# ऋग्वेद-संहिता

(मूलसहित सरल नेपाली भाषामा)


अनुवादक

तिलकप्रसाद लुइटेल



विद्यार्थी पुस्तक भण्डार

प्रकाशक तथा वितरक

भोटाहिटी, काठमाडौँ

| | |
|---|---|
| पुस्तक | : ऋग्वेद संहिता |
| प्रकाशक | : विद्यार्थी पुस्तक भण्डार<br>भोटाहिटी, काठमाडौं<br>फोन. नं. ४२२७२४६, ४४२३३३२ |
| संस्करण | : २०६३ |

| | |
|---|---|
| मूल्य | : रु.५००/- |
| ISBN | : 99946-718-1-2 |
| सेटिङ/आवरण | : सुलभ कम्प्युटर सर्भिस बागबजार,काठमाडौं फोन : ४-२५२९५९ |
| मुद्रक | : स्काई मिडिया |

# वेदोऽखिलो धर्ममूलः

वैदिक सनातन कर्मकाण्ड महासङ्घ, नेपाल

विश्वसाहित्यकै ज्येष्ठश्रेष्ठ अपौरुषेय ज्ञानगङ्गाको महासागर, अभिलिखित आदिग्रन्थका रूपमा ऋग्वेद मानिएको छ। यो ग्रन्थ सम्पूर्ण ज्ञानविज्ञानको आदिम स्रोत, ज्ञानसत्ता लाभ, विचार अर्थबोधक वेदहरूमा सर्वश्रेष्ठ ऋचाहरूको सँगालो हो। अन्वेषककका भौतिक, आध्यात्मिक र मिश्रित विचारधाराहरूकै आधारमा सर्वश्रेष्ठ, सर्वमान्य एवं सर्वपक्षीय छ। तुलनात्मक अध्ययनका लागि अपरिहार्य, मानवसंस्कृति, सभ्यता, साहित्यकलाहरूको मूल एवं आर्य धर्मसंस्कृति, सभ्यता ज्ञानविज्ञानहरूको अपरिहार्य स्रोतका रूपमा प्रतिष्ठित छ। त्यस ऋग्वेदलाई सरल नेपाली भाषामा रूपान्तरण गरी नेपाली जनमानसमा सेवा पुऱ्याउने अनुवादक विद्वान् श्री तिलकप्रसाद लुइटेलजीलाई अन्तरआत्माद्वारा हार्दिक धन्यवादसहित उत्तरोत्तर प्रगतिको कामना गर्दछौं।

प्रा. पूर्णप्रकाश नेपाल 'यात्री'
संरक्षक
वैदिक सनातन कर्मकाण्ड महासङ्घ, नेपाल

प्रा. रामचन्द्र भण्डारी
महासचिव
वैदिक सनातन कर्मकाण्ड महासङ्घ, नेपाल

# मैले भन्नै पर्ने

प्रस्तुत ग्रन्थ तयार गर्नुभन्दा पहिले मैले **चाणक्यनीति, मनुस्मृति, पञ्चतन्त्र** आदि संस्कृतका कतिपय पुस्तक नेपालीमा रूपान्तरण गरेको छु। ती पुस्तकका नाताले प्रत्यक्ष भेट हुने कतिपय महानुभावहरूले मलाई 'विद्वान्' भन्ने प्रयास गर्नुभयो। आफूप्रति त्यो सम्मानपूर्ण व्यवहार प्रदान गरेको पाउँदा खुसी नहुने कुरै भएन। म खुसी भएँ तर वास्तविकताको धरातलमा उभिएर हेर्दा मैले न ती ग्रन्थ आफूले रचना गरेको हुँ, न त्यहाँ मेरो निजी विचार नै केही छ। त्यो त केवल कसैले तयार गरेको अभिव्यक्ति आफूले जेजस्तो रूपमा बुझेँ, त्यही सारेको मात्रै हुँ, उक्त ग्रन्थहरूको म स्रष्टा वा द्रष्टा केही होइनँ, मेरो 'विद्वत्ता' त्यहाँ केही छैन। उक्त ग्रन्थहरू लौकिक वा आधुनिक संस्कृतमा छन्। ती पुस्तकलाई नेपालीमा प्रकट गर्दा पनि जानेअनुसार आफूले रुचाएका भाषामा रूपान्तरण गरिसकेपछि प्रकाशित हुनुपूर्व नै हिन्दी, बङ्गाली, आसामी वा अङ्ग्रेजी भाषामा भएको अनुवादसँग पनि एक पटक पढेर दाँजेको छु। यसो गर्नु भनेको, उक्त ग्रन्थहरूमा अन्य विद्वान्हरूले परम्परागत रूपमा लगाएको अर्थ र मैले गरेको अनुवादमा एकरूपता होस् भनेर नै हो। त्यसअनुसार चिन्तक विद्वान्हरूले दिएको विचारको भारी डराईडराई आफ्ना समाजसम्म पुऱ्याउने प्रयास मात्रै मैले गरेको हुँ। हरिद्वारमा छँदा स्वामी दयानन्द सरस्वतीले अनुवाद गरेका वेदका पुस्तकका केही अंश सर्सर्ती सुन्ने अवसर मैले पाएको थिएँ। आर्य समाजसँग सम्बद्ध महात्मासँग त्यो पुस्तक थियो र त्यसको अनुवाद स्वामी दयानन्द सरस्वतीले गरेका हुन् भनी उनले बताएका थिए। त्यसभित्र भएका हिन्दीका वाक्य पढेर व्याख्या गर्दै उनी सुनाउँथे। त्यहाँ थोरै कुरो लेखिएको र उनले व्याख्या गर्दा त्यससँग सम्बन्धित धेरै कुरो सुनाएको जस्तो मलाई लाग्दथ्यो। गाता हालिएको मोटो पुस्तक उनका आफ्नै हातले बीचबीचमा पल्टाएर देखाएका हुनाले कुन वेद हो, कहाँ, कहिले र कसले छापेको भन्ने मलाई थाहा भएन तर नेपालीमा पनि यसरी नै वेदको अर्थ लगाएर व्याख्या गर्न पाए राम्रो हुने रहेछ भन्ने मलाई उसै बेला लागेको थियो। उनीबाट अलग्गिएर सुविधा र असुविधाका लगभग अठारबीस वर्ष बिते, त्यो विचार कहिले सेलायो थाहा भएन। सायद उक्त कुराको प्रभाव मभित्र गहिरो बनेर रहेछ, त्यसैले माथि उल्लिखित संस्कृतका पुस्तकको नेपाली रूपान्तर गर्न सुरु गरेँ। लौकिक संस्कृतका पुस्तकहरू नेपालीमा रूपान्तर गर्दा पनि मिल्यो कि मिलेन भन्दै उत्सुक भएर अरू पुस्तक हेर्छु भने मेरा लागि ऋग्वेदको भनाइ नेपालीकरण गर्नु चुनौतीकै कुरो हो। अन्य विद्वान्हरूका लागि साधारण भए पनि वैदिक संस्कृत मेरा लागि आकाशको फलसरह नै हो। म वास्तवमा विद्वान् थिएँ भने खुरुक्क अनुवाद गरेर निर्धक्क रहन सक्थेँ, तर त्यसो भएन। यथासम्भव उचित अर्थ आओस् भन्ने प्रयास

गर्दै लेख्दा शब्दचयन, वाक्यगठन, भावप्रकटीकरण आदिका सम्बन्धमा कतैकतै दुविधामा परें। त्यसरी अल्मलिएका ठाउँमा विभिन्न विद्वान्हरूसँग मौखिक छलफल गरें। त्यसो गर्दा चित्त बुभेको जति उसै रूपमा स्वीकार गरें र चित्त नबुभ्दा अन्य भाषाका अनुवादहरूबाट पनि सहयोग लिएँ। यसरी नै ऋतुचक्र तीन पटक घुमेछ। यस काममा म कति सफल भएँ र कति असफल रहें भन्ने कुरो भविष्यकै गर्भमा छ; विद्वान् पाठकहरूले ठम्याउनुहुनेछ।

भाषा र दर्शनको इतिहास साहित्यभन्दा पुरानो हो। विश्वज्ञानका क्षेत्रमा विद्वान्हरूको इतिहास त्यसभन्दा पक्कै पुरानो छ। स्तरीय नेपाली कवितासाहित्य लेख्नुभन्दा पहिले संस्कृतको साहित्यरचना नेपालमा भएको कुरो पनि निर्विवाद छ। त्यस बेलादेखि आजसम्म विद्वान्हरूको प्रवाह दिनानुदिन झन् बलियो हुँदै आएको छ। यसो हुँदा वैदिक संस्कृतका धुरन्धर विद्वान्हरू नेपालमा भानुभक्तभन्दा पहिले पनि थिए र आज पनि कैयौं छन् भन्ने कुरो निर्धक्कसाथ भन्न सकिन्छ। त्यति हुँदा पनि नेपालीमा वेदका प्रत्येक हरफको अनुवाद वा भावार्थ खुलेको पुस्तक चासो राखेर खोज्दा मैले पाइनँ। नेपाली समाजमा यसको आवश्यकता नै रहेनछ र कसैले तयार नगरेका हुन् कि भनौं भने 'आत्मवत् सर्व भूतेषु' भन्ने न्यायले हेर्दा मैले खोजेको वस्तु अर्कोले पनि खोजेको हुन सक्छ भन्न सक्ने ठाउँ देखिन्छ। अनि हिन्दीमा उल्था भएका पुस्तक पनि नेपालभित्रकै बजारमा बिकेको मैले देखें। हिन्दी वा अन्य भाषाको अनुवाद पढ्न नेपाली पाठक तयार हुनु भनेको नेपालीमा नपाएर हुनुपर्छ, नेपालीमा तयार भएका पुस्तकको आवश्यकता नभएर होइन भन्ने मलाई लाग्यो। त्यसैले यो पुस्तक नेपाली चासोको वस्तु हो र जसरी हुन्छ उसरी नै तयार गर्नुपर्छ भनेर विद्वान्हरूले मलाई भाग लगाइदिएझैं लाग्यो।

भाषा, साहित्य, संस्कृति, इतिहास, समाजशास्त्र आदि जुनसुकै विषयको अध्ययन गर्दा ऋग्वेदको चर्चा आउँछ। ती सबै विषयका असङ्ख्य विद्वान्हरू नेपालमा छन् र वैदिक तथा लौकिक संस्कृतका विद्वान्हरू समाजमा पहिले पनि थिए र आज पनि छन्। यही मेरो जिम्मा लागेको बाहेक आजसम्म समग्र वेदको भनाइ नेपालीमा प्रस्तुत गर्न कुनै विद्वान् अघि नसर्नुको अन्य कारण मैले देखिनँ। यस्ता विभिन्न महत्त्वपूर्ण विषयहरूको स्रोत र आधार हुनाले नै ऋग्वेद आकाशझैं विशाल, समुद्रझैं गम्भीर, ब्रह्माण्डजस्तो अनन्त, हिमालझैं उच्च, बहुमूल्य र बहुउपयोगी रत्नजस्तो छ। यस्ता विशाल ज्ञानको निधिका विषयमा मैले बोल्ने प्रयास गर्नु भनेको 'तितीर्षु दुस्तरं मोहादुडुपेनास्मि सागरम्' भनेझैं हो। मसित ज्ञान भएर पाण्डित्य प्रदर्शन गर्न खोजेको पटक्कै होइन, केवल आफ्ना भागको भारी उचाल्ने प्रयास मात्रै गरेको हुँ। मेरा यस प्रयासमा वेदको ज्ञान प्रचुर हुने विद्वान्को विचार मैले यस ग्रन्थमा देखाएको भन्दा फरक हुन सक्छ। मैले एक किसिमले देखेको कुरो अन्य विद्वानले त्यसभन्दा भिन्न रूपमा पनि देखेको हुनसक्छ। समाजले त्यस अवस्थामा मैले बुझेको कुरो त्रुटिपूर्ण भएमा विद्वत्वर्गले सूचित गराइरहनुहुनेछ। समाजले विद्वान्हरूबाट वेदका विषयमा अझै बढी वास्तविक ज्ञान प्राप्त गर्न सकोस् भन्ने नै मेरो सदाशय रहेको छ।

यो अनुवाद गर्ने नै प्रयास हो तापनि मैले यस ग्रन्थको नेपाली भाषालाई 'अनुवाद' भन्नुको सट्टा 'भावार्थ' भन्न रुचाएको छु। अनुवाद भन्ने शब्दले एक भाषामा भएको कुरो अर्को भाषामा रूपान्तर गरिएको भन्ने अर्थ लाग्छ। मूल भाषा वैदिक संस्कृतमा भएका विचारलाई हुबहु नेपालीमा उल्था गर्नु मेरा लागि दुष्कर कार्य नै हो भन्ने मैले स्विकारिसकेको छु। स्रोतभाषामा उल्लिखित कथनको ध्वन्यात्मकता, लालित्य, ओज, प्रतीकात्मता, छन्द, लक्षण, गुण, अलङ्कार आदि उति नै वर्ण, शब्द, वाक्य वा हरफले हुबहु लक्षित भाषामा दिन सक्नु वास्तवमा नै अनुवादको स्तरीयता हो। मेरा सामर्थ्यको कमी हो वा वास्तविकता नै त्यही हो, वैदिक संस्कृतका अनेकार्थी धातु र अनेक अर्थ निर्वाह गर्ने शब्दले एउटै कथनबाट अनेकौं अर्थ प्रतिबिम्बित भएझैं नेपालीका उसै अनुरूपका शब्दावलीले उसै रूपमा अर्थ द्योतन गराउन सक्दो रहेनछ। भाषा फरक

परेपछि व्याकरण र शब्दशक्ति पनि फरक पर्नुलाई मैले यसको कारण हो कि जस्तो मानेको छु। आआफ्ना भाषामा व्याकरणको अनुशासन फरक पर्दछ। संस्कृत र नेपालीमा लिङ्ग, पुरुष, वचन आदिका विधान आआफ्नै छन्। एउटाको व्याकरणिक कोटीको विधान अर्कासित ठ्याम्मै मेल नखानु, शब्दशक्ति वा अर्थशक्तिमा समानता नहुनु, लक्षणा, ध्वनि आदिको माधुर्य उसै रूपमा नफुर्नुजस्ता विभिन्न कारणले गर्दा प्रत्येक शब्दशब्द र पदपद उसै मूल्यमा वा उसै रूपमा स्थापित हुँदा रहेनछन्। त्यसो हुँदा ध्वन्यात्मक अभिव्यक्तिलाई व्याख्यात्मक रूपमा पनि लैजानुपरेको छ भने बहुअर्थी कथनलाई फरकफरक रूपमा दोहोऱ्याएर लेख्नुपर्ने पनि भएको छ। नाम धातुका ठाउँमा मूल शब्द र धातु अलग पार्नुपरेको छ भने समस्त शब्दलाई विग्रह गरी अनेकौं शब्दमा लेख्नुपर्ने पनि भएको छ। भाषामात्रै आफ्नो पार्ने र वाक्य गठन र सङ्कथन उसै रूपमा ल्याउने प्रयास गर्दा भन्न खोजेको कुरो अस्पष्ट र दुर्बोध्य होलाजस्तो लागेर त्यसो गरेको हुँ। त्यसो भएकाले नै मैले यसलाई अनुवाद भन्दा भावार्थ भन्न सहज ठानेको हुँ। त्यसो हुँदा मूल ग्रन्थमा मैले जे बुझें त्यही विचार मात्रै नेपालीमा प्रकट होस् भन्ने प्रयास गरेको छु। त्यसै कारणले यस ग्रन्थमा लिङ्ग, वचन, आदरार्थी प्रयोग आदि व्याकरणात्मक कोटी नेपालीकै चलनमा राख्ने प्रयास गरेको छु। सरल, संयुक्त वा मिश्रवाक्यका सम्बन्धमा पनि नेपाली कथन कुन किसिमका वाक्यमा सजिलो हुन्छ त्यसअनुसार नै रहोस् र वाच्यकै सम्बन्धमा पनि मूल भाषामा भएका वाक्यढाँचा पछ्याउनुभन्दा कुन वाच्यमा नेपाली कथन सजिलो हुन्छ, त्यसै अनुसार होस् भन्ने कोसिस गरेको छु। यसरी जे छ त्यही देखाउनुभन्दा जे बुझें त्यही देखाउने प्रयास बढी भएकाले नै मैले यसलाई भावार्थ भन्न रुचाएको हुँ। अनुवाद भनेको भए मूल भाषामा भएजस्तै छन्द, ध्वनि, अलङ्कार आदि साहित्यिक पक्ष र वचन, लिङ्ग, पुरुष, काल, समास, धातुप्रयोग आदि व्याकरणको पक्षमा अनुशासित रहेर त्यति नै शब्द र वाक्यमा नेपालीमा भनाइ आएको हुनुपर्दथ्यो। यहाँ त भन्न खोजेको कुरो बुझियोस् भनेर सम्प्रेषणतर्फ मात्र ध्यान दिइएको छ। त्यति हुँदा पनि मलाई बानी बसेका अरू भाषाको प्रभाव पो कथनभित्र परिरहेको छ कि भन्ने शङ्का लाग्छ, त्यस पक्षमा पनि सुझावको आशा मैले गर्नै पर्छ।

हाम्रा समाजमा 'वेद भनेको भगवान्का मुखको वाणी हो', 'वेदको अर्थ कसैले लगाउन सक्दैन', 'वेदको अर्थ जसले जे लगाए पनि लाग्छ' वा 'वेद स्वयं भगवान् हुन्' भन्ने खालका परम्परागत विचार छन्। यी विचार वेदप्रतिको हाम्रा आध्यात्मिक समाजको सम्मानपूर्ण भावना हुन्। यिनै सम्मानपूर्ण भावनामा 'अर्थ लाग्दैन' वा 'जे लगायो त्यही अर्थ लाग्छ' भन्न खोजियो भने अनर्थ होला कि जस्तो मलाई लाग्छ, किनभने यी दुवै भनाइको आशय मेरा बुझाइमा एकै हुन्। अर्थ नै नभएको वस्तु निरर्थक हो, त्यसले कुनै हित गर्दैन र जसलाई जे मन लाग्यो त्यही अर्थ लगाउन मिल्ने कुरो भयो भने पनि मन लागी अर्थ लगाउनेहरूले आफ्नो स्वार्थपूर्ति हुने खालको अर्थ लगाउँछन् र त्यसले पनि हितविपरीत नै प्रभाव पार्दछ। वेदको अर्थ नै 'ज्ञान' भएको र यसभित्र खोज्नुपर्ने कुराहरू मनग्गे रहेका हुनाले यो हितकारी शिक्षाको भण्डार हो; मानवहितकारी शिक्षाको निधि हो। पक्का कुरो के हो भने अति सावधानीसाथ विविध अर्थ लाग्ने गरी साङ्केतिक र प्रतीकात्मक कथन रहेका हुँदा यसभित्रबाट अनेक अर्थ निस्कने सम्भावना अवश्य छन्, तर मियोविनाको दाईजस्तो जथाभावी अर्थ लाग्ने कुरो भने पक्का होइन र यो मैले लिखित सामग्रीका आधारमा भनेको नभएर समाजमा वेदका विषयमा मौखिक गफ हुँदा सुनेका कुरालाई उल्लेख गरेको हुँ। विलक्षणता रहेकाले गर्दा भगवान् वा भगवान्को वाणी भनिएको हुनुपर्ने अनुमान पनि मैले नै गरेको हुँ। यसभित्र हेर्दै जाँदा आगोको उत्पत्तिदेखि लिएर फलामे किल्लाभित्र रहेका सहरको चर्चा छ। यज्ञको विधानदेखि लिएर सोमरस पान, मानिसका शरीरमा कृत्रिम अङ्ग प्रत्यारोपण, मानिसको सहरमुखी प्रवृत्तिसम्मका कुराहरू र जालझेल, जुवा, युद्ध तथा न्याय-अन्यायका कुराहरू पाइन्छन्। समग्रमा भन्नुपर्दा सृष्टिको थालनीदेखि अत्यन्त विकसित सामाजिक व्यवस्थाका चित्रहरू यसमा झल्कन्छन्। त्यसो हुँदा यहाँ मानिसका समाजको

विकासक्रम छ, शक्तिको प्रशंसा छ, प्रकृतिको सम्मान छ र साँच्चै भनौं भने यसको अध्ययन गरेर समाजले आर्जन गर्नुपर्ने हितकारी कुरा अझै कति हो कति छन्। यसलाई अपौरुषेय र भगवान्को रूप मान्नुको आशयमा यही कारण पनि एउटा रहेको हुनुपर्छ भन्ने मलाई लागेको छ। आधुनिक र वैज्ञानिक दृष्टिकोण भएका विद्वान्हरू यसलाई विभिन्न समय, परिस्थिति र स्थानमा विभिन्न क्षेत्रका चिन्तक र सर्जकहरूले परम्परागत रूपले विकास गर्दै ल्याएको बहुव्यक्ति सिर्जित ग्रन्थ हो भन्दछन्। यो ग्रन्थ पौरुषेय हो वा अपौरुषेय भन्ने कुराको निर्णय विद्वान् चिन्तकहरूले गर्नुहुनेछ भन्ने आशा गर्नै पर्दछ र समाजले वेदका विषयमा उचित अवधारणा प्राप्त गर्नेछ भन्ने विश्वास गरौं।

हिन्दू सभ्यता र वैदिक सभ्यता भनेको एउटै हो कि जस्तो मलाई लागेको छ, किनभने विश्वकै सर्वप्राचीन समाजनिर्देशक दर्शनहरूका पङ्क्तिमा वेदको स्थान रहेको छ। हिन्दूहरूका आध्यात्मिक दर्शनका रूपमा आरण्यक, उपनिषद्, स्मृति, पुराण आदि वेदबाटै प्रतिपादित भएका हुनाले नै तिनलाई वैदिक दर्शन भनिएको हो कि जस्तो लाग्छ। हिन्दू समाजभित्र चार वर्णको व्यवस्था रहेको छ र मैले जानेअनुसार ती चारमध्ये वेदको ज्ञान केवल ब्राह्मणलाई मात्रै हुनुपर्छ भन्ने मान्यता रहेको छ। ऋग्वेदमा समाजका मानिसको 'पञ्चजनः' भनेर पाँच वर्ग मानिएको छ तापनि वेद कसले पढ्ने र कसले नपढ्ने भनेर सीमाङ्कन गरेको मेरा आँखाले कतै पनि देख्न पाएनन्। यस्तो धारणा जहाँबाट आए पनि यसले मानवसमाज र वेदका बीचमा फाटो अवश्य ल्याएको मान्नुपर्दछ। वेदलाई ब्राह्मणइतरले ब्राह्मणको पेवा भन्न थाले भने वेदको ज्ञानबाट ब्राह्मणबाहेक अरू वञ्चित हुन पुगे। अर्को शब्दमा भन्नुपर्दा, यस विचारले समाजका तीन वर्गलाई अन्धकारमा राख्ने प्रयास गर्‍यो। ब्राह्मणभन्दा इतरले वेदको अध्ययन गर्नु हुँदैन भन्ने मान्यतालाई मान्ने हो भने 'वेद स्वयं भगवान् हुन्' वा 'वेद भनेको भगवान्को वाणी हो' भन्ने भनाइमा शङ्का गर्नुपर्ने हुन्छ, किनभने भगवान् यसका वा त्यसका मात्र पेवा पक्कै नहोलान्। आजका मानिसले वेद सबैको साझा ज्ञानको स्रोत हो भन्ने स्वीकार गरेका छन्। केवल ब्राह्मणले मात्रै पढ्नुपर्ने भन्ने मान्यताका विपरीत वेदभित्रबाट निकालिएको गायत्री मन्त्र जतातै कागजमा छापिएका तस्विरहरू सहरबजारमा पाइन्छन्, त्यहाँ केवल ब्राह्मणका लागि भनेर लेखिएको हुँदैन। कैयौं वैदिक विद्वान्हरूले त्यही मन्त्र माइकबाट आमजनतालाई सुनाइरहेका हुन्छन्, त्यस बेला ब्राह्मणभन्दा बाहेककाले नसुन भन्ने उनीहरू भन्दैनन्। त्यो पनि वेद सबैको हो भन्ने भावना हो। जर्मनीलीलगायत विश्वका अनेकौं भाषामा वेदको अनुवाद भइसकेको छ। त्यसो हुँदा ज्ञान सबैले पाउनुपर्छ भन्ने विचार विश्वमा सबैतिर रहेको छ र हामीसँग त झन् 'वसुधैव कुटुम्बकम्'को भावना छ। वेद शब्दको अर्थ नै 'ज्ञान' हुनाले ज्ञान यसले लिनुपर्छ र त्यसले लिनु हुँदैन भन्नु राणाशासनमा जनताका छोराले पढेर विद्वान् होलान् भनी विद्यालय खोल्न दिइएन भन्नुजस्तै हो कि मलाई लागेको छ। त्यस किसिमले बौद्धिक क्षेत्रमा भेदभाव र तानाशाही दृष्टिकोण राख्दा तत्काल कसैलाई केही लाभ भए पनि कालान्तरमा सिङ्गो समाजलाई अपूरणीय क्षति हुन्छ। यसको उदाहरण राणशासन र त्यसले नेपाली शिक्षाजगत्मा पारेको प्रभाव हाम्रै अगाडि छ। भारतमा वेद ब्राह्मणको मात्रै पेवा हो भन्ने भनाइको मान्यतामा परिवर्तन दयानन्द सरस्वतीकै पालामा आएको हो। त्यसो भएकैले उनले हिन्दी भाषामा वेदको अनुवाद गरेका छन्। वेद आबालवृद्धवनिताका लागि पठनीय भएको छ। नेपाल त संवैधानिक मान्यता प्राप्त हिन्दू अधिराज्य नै हो। यसैले पनि सबै नेपालीहरू वेदको अध्ययन गर्नमा अधिकार प्राप्त छन्। हिन्दूहरूले मात्र होइन, सबै जातजाति, धर्मसम्प्रदायले अध्ययन गरेर वेदबाट लाभान्वित हुन पाउँदा हाम्रो, हाम्रा दर्शनको र हाम्रा प्राचीनताको गरिमा उच्च होलाजस्तो मलाई लाग्छ। त्यसैले सबै धर्मसम्प्रदायका नेपालीले यसलाई पढून् भन्ने मनसाय मेरो रहेको छ। अझ ऋग्वेदमा उल्लेख भएका पणीहरूको देश नेपाल हो भनेर इतिहासकार श्री प्रणय पासाले 'लुकेको नेपाल' र 'शाक्य'मा प्रमाणित गर्न खोजेका छन्। त्यस आधारमा पणीहरू नेपाली हुन्। वेदमा उनीहरूको स्थिति प्रशंसनीय नदेखाइएको भए पनि

उनीहरू नेपाली नै हुन् र वेदको सङ्कलनमा उनीहरूको लगानी छ । वेदमा उनीहरू प्रत्यक्ष क्रियाशील देखिएका छन्, त्यसैले यो उनीहरूका इतिहासको अभिलेख हो । त्यसो हुँदा यो पुस्तक पणीहरूको पनि हो । उनीहरू ब्राह्मण होइनन् भन्ने आशय वेदमा व्यक्त भएको छ र इतिहासकार पासाको ठहर पनि त्यही छ । त्यसो भए पनि उनीहरूको अधिकार वेदमा छ । पणीहरूसँग एकै राज्यमा बसोबास गर्ने अरूको पनि यो इतिहास साझा हो । पासाको यो भनाइ नै सत्य हो भने वेदमा उल्लिखित कैयौं घटनाको आधारभूमि नेपाल नै हो भन्नुपर्छ । त्यस अवस्थामा पणीहरूका साथै यहाँका सबै बासिन्दाको यो साझा सम्पत्ति हो । त्यसैले वेदको विचार नेपालीले बुझ्ने भाषामा व्यक्त हुनु भनेको नेपालीको अधिकार नेपालीलाई प्राप्त हुनु हो ।

दयानन्द सरस्वतीको **ऋग्वेद**, पं श्रीराम शर्मा आचार्यको बरेलीबाट प्रकाशित **ऋग्वेद**, वेदमूर्ति पं. श्रीराम शर्मा आचार्यको शान्तिकुञ्ज हरिद्वारबाट प्रकाशित **ऋग्वेद**, **सायण भाष्य**, दयानन्द सरस्वतीको **सत्यार्थप्रकाश**, **निघण्टु**, **सिद्धान्त कौमुदी**, **हिन्दू जातिको उत्थान र पतन**, **मनुस्मृति**, **पञ्चतन्त्र**, **अमरकोश**, **नेपाली बृहत् शब्दकोश**, **प्रयोगात्मक शब्दकोश**, श्री प्रणय पासाको **लुकेको नेपाल**, श्री प्रणय पासाकै प्रकाशनको तयारीमा रहेको **शाक्य**, आदि पुस्तकबाट मैले यो ग्रन्थ तयार गर्न सहयोग र प्रेरणा पाएको छु । पुस्तक तयार गर्नका लागि मलाई धेरै तिरबाट विभिन्न किसिमले सहयोग प्राप्त भएको छ । श्रीमती सुमना श्रेष्ठ र आफ्नै जीवन सहयात्री श्रीमती गीता लुइटेलले कम्प्युटर टाइप गर्न सहयोग गरेका छन् । मित्र रमेश भट्टले नेपाली भाषामा रूपान्तर भइसकेपछि शुद्धाशुद्धि हेर्न सहयोग गरेका छन् । जीवनका सुविधा र असुविधाहरूमा पाइलैपिच्छे सहयोग गर्दै आएका भाइ कमल सुवेदीले यस पुस्तकमा पनि भाषा सम्पादन गर्नमा ज्यादै रुचि लिएर मलाई धेरै गुन लगाएका छन् । आवश्यक परेका सामग्री खोज्नमा छोरो विभव लुइटेल र पं. श्री विनोद पौडेलले सहयोग गरेका छन् । ठाउँठाउँमा छलफल गरेर विद्वान् लेखक मधुसूदन पाण्डेय र उपप्राध्यापक रामप्रसाद ज्ञवालीले सहयोग पुऱ्याएका छन् । स्वास्थ्यस्थिति प्रतिकूल रहँदा पनि अत्यन्त सदाशयपूर्वक अनुवाद, सम्पादन र संशोधन गर्ने क्रममा राखिएका जिज्ञासा समाधान गरिदिने अग्रज मानवशास्त्री मूर्धन्य विद्वान् प्रा. श्री पूर्णप्रकाश नेपाल 'यात्री'बाट मनग्गे सहयोग पाएको छु । आकर्षक रूपमा कम्प्युटर डिजाइन सुलभ कम्प्युटर बागबजारले गरिदिएको छ । स्रोतग्रन्थ र सन्दर्भसामग्रीहरू उपलब्ध गराउँदै यो ग्रन्थ प्रकाशन गर्ने आश्वासन दिने विद्यार्थी पुस्तक भण्डारका प्रबन्धक **श्री शान्त गौतमज्यूबाट** सबैभन्दा धेरै र शब्दले बयान गरिनसकिने सहयोग पाएको छु । त्यसो हुँदा स्रोतग्रन्थ, सन्दर्भसामग्री, तिनका स्रष्टा र माथि उल्लिखित सबै क्षेत्रका सहयोगीहरूप्रति यथायोग्य आभार अभिव्यक्त गर्नुपर्ने मैले कर्तव्य ठानेको छु । अन्त्यमा, आफैंले गरेका काममा रहेको त्रुटि आफैंले देखिँदैन । हेर्दा हेर्दै पनि छुट्न पुगेका यान्त्रिक वा बौद्धिक त्रुटिहरू विद्वान् पाठक महानुभावहरूले यो पुस्तक हेरेर औंल्याइदिनुभएमा त्यो गुन कहिल्यै नबिर्सीकन सच्याउनतर्फ लाग्ने प्रेरणा पाउनेछु र म त्यस कुराले कृतज्ञ हुनेछु ।

**तिलकप्रसाद लुइटेल**

# प्रकाशकीय

पाठकले खोजेको सामग्री उपलब्ध गराउनु हाम्रो व्यावसायिक कर्तव्य हो भने समाजको हित हुने सामग्री प्रकाशमा ल्याउनु समाजप्रतिको दायित्व हो। हामी वैदिक परम्परामा आबद्ध हिन्दू धर्मसंस्कृतिका अनुयायी हौं। हाम्रो परिचय वैदिक दर्शनमा आधारित कर्म, ज्ञान र भक्तिमा रहेको छ। वैदिक दर्शन वेदबाट निर्देशित छ। एकाग्र मनले कर्तव्यनिष्ठ रहँदै देश, समाज र परम्पराप्रति आदरको भाव प्रकट गर्नु र सत्कर्मप्रति इमानदार रहनु हाम्रा दर्शनको मूल अभिप्राय हो। हाम्रो धार्मिक मान्यता अहिंसा र सदाचारका जगमा अडिएको हुनाले हाम्रो समाज धर्मप्रति आस्थावान् छ। त्यसैले हाम्रो धर्म र दर्शनका बीच गहिरो नाता छ। अहिंसा र सदाचार हाम्रा समाजका मूलभूत आदर्श हुन्, जो श्रुति, स्मृति, पुराण, उपनिषद् आदिबाट समाजमा प्रचार हुन्छन्; तिनको स्रोत वेद हो। हाम्रो समाज उसै वैदिक परम्पराले ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र गरी चार वर्णमा विभाजित छ। चार वर्णमध्ये ब्राह्मणले वेदको अध्ययन गर्ने अधिकार पाएको र अरू तीन वर्णले वेद पढ्नु हुँदैन भन्ने धारणा समाजमा रहेको पाइन्छ। यसो भन्नु मानिसप्रति न्यायको विचार पक्कै होइन। यस विचारले गर्दा हाम्रा समाजका क्षत्रिय, वैश्य र शूद्र यी तीन वर्ण आफूलाई चिन्ने र चिनाउने शिक्षाबाट वञ्चित रहे। जुनसुकै किसिमको शिक्षा जुनसुकै जिज्ञासुले लिन पाउनुलाई मानवीय अधिकार मान्न सक्नुपर्छ। अन्य देशका जिज्ञासुले पढ्न पाएको सामग्री पढ्न हाम्रा समाजमा हामीले नै बाधा हाल्यौं भने त्यसको हानी हामीलाई नै हुन्छ। चारै वर्णले इच्छाबमोजिम पढ्न पाएका खण्डमा मात्रै प्राचीन समयमा शिक्षाको प्रचारस्थलका रूपमा रहेको आर्यसभ्यताको गरिमा बढ्छ, प्राचीन कालका गार्गी मैत्रेयीझैं नारीहरू शिक्षित हुन पाउँछन् र सिङ्गो समाज शिक्षाका ज्योतिले झलमल्ल हुन्छ। शिक्षा समाजलाई अग्रगति प्रदान गर्ने शक्ति हो, यसमा जातजाति वा वर्णधर्मको तगारो हाल्नुभन्दा उदार मनले सबैसम्म पुऱ्याउनु समाजका लागि हितको विषय हुन्छ भन्ने हामीले मान्नुपर्दछ। यसै भावनाले प्रेरित भएर नै अङ्ग्रेजीलगायत विभिन्न भारतीय भाषाको जानकारी भएका संस्कृतका विद्वान् श्रीतिलकप्रसाद लुइटेलले सरल नेपाली भाषामा ऋग्वेदको अनुवाद गर्न थाल्नुभएको जानकारी हुन आयो। धेरै वर्ष खर्चिएर ग्रन्थ तयार भएछ र प्रकाशन गर्नका लागि पनि हाम्रै प्रकाशनलाई आग्रह गर्नुभयो। त्यस आग्रहलाई हाम्रा प्रकाशनले समाजसेवाको उचित अवसर पाएझैं मानेर सहर्ष स्वीकार गऱ्यो। भविष्यमा पनि उहाँबाट यस्तै सामग्री आऊन् र समाजसेवा गर्न पाइयोस् भन्ने शुभकामना सहित।

शान्त गौतम
विद्यार्थी पुस्तक भण्डार

# विषय सूची

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ प्रथमं मण्डलम्॥

॥पहिलो मण्डल॥

[सूक्त - १]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - अग्नि। **छन्द** - गायत्री

**ॐ अग्निमीडे पुरोहितं यज्ञस्य देवमृत्विजम्। होतारं रत्नधातमम् ॥१॥**

हामी विश्वामित्र आदि ऋषिहरू अग्निको स्तुति गर्दछौं। यज्ञ भनेको पुरोहितहरूले गर्ने कल्याणकारी कार्य हो। हाम्रा यज्ञमा अग्निदेव आऊन्। यज्ञमा सहयोग गर्नका लागि देवताहरूलाई अग्निले बोलाऊन्। ऋत्विक्हरू समयअनुसार यज्ञ गर्न लागेका छन्। होताहरू यज्ञमा आहुति चढाउँछन्। ऋत्विक्हरू अग्निलाई बोलाउँछन्। देवताहरूका लागि गर्न लागिएको यज्ञलाई अग्निले रत्नरूपी फलले सजाउँछन्।

**अग्निः पूर्वेभिर्ऋषिभिरीड्यो नूतनैरुत। स देवाँ एह वक्षति ॥२॥**

भृगु, अङ्गिरा आदि प्राचीन ऋषिहरूले अग्निको प्रशंसा गरे। आधुनिक ऋषिकल्पमा वेदको ज्ञान भएका विद्वान्हरूले अग्निदेवको स्तुति गर्दछन्। हाम्रा यस यज्ञमा अग्निले देवताहरूलाई डाकून्।

**अग्निना रयिमश्नवत् पोषमेव दिवेदिवे। यशसं वीरवत्तमम् ॥३॥**

सबैबाट अग्निदेवको प्रशंसा गरिन्छ। उनले मानिसको जीवन दिन प्रतिदिन सफल र सबल गराउँछन्। उनै अग्निदेवले धन र ख्याति कमाउने सक्ने वीर सन्तान दिन्छन्।

**अग्ने यं यज्ञमध्वरं विश्वतः परिभूरसि। स इद्देवेषु गच्छति ॥४॥**

हे अग्निदेव ! तिमी सबैको रक्षा गर्न सक्दछौ। तिमीले सबैतिरबाट रक्षा गरिरहेको यज्ञ नै देवताहरूसमक्ष पुग्दछ।

**अग्निर्होता कविक्रतुः सत्यश्चित्रश्रवस्तमः। देवो देवेभिरा गमत् ॥५॥**

हे अग्निदेव ! तिमी यज्ञको भोग्य पदार्थका रूपमा हवि प्रदान गर्ने हौ। ज्ञान र कर्मको संयुक्त शक्तिका प्रेरक तिमी नै हौ। त्यसो हुनाले तिमी सत्यस्वरूप र विलक्षण छौ। तिमी देवताहरूसँगै यस यज्ञमा आइदेऊ।

**यदङ्ग दाशुषे त्वमग्ने भद्रं करिष्यसि। तवेत्तत् सत्यमङ्गिरः ॥६॥**

हे अग्निदेव ! तिमी यज्ञ गर्ने यजमानलाई धन, धातवास र सम्मान प्रदान गर्दछौ। तिमी नै पशुहरूलाई समृद्ध गरेर कल्याण गर्दै छौ। ती सबै कामको फल भविष्यमा गरिने यज्ञका माध्यमबाट तिमीलाई नै प्राप्त हुनेछ।

**उप त्वाग्ने दिवेदिवे दोषावस्तर्धिया वयम्। नमो भरन्त एमसि ॥७॥**

हे प्रचुर तेजले सम्पन्न अग्निदेव ! हामी तिम्रा सच्चा उपासक हौं। तिमीबाटै प्रेरित भएका सद्बुद्धिले हामी तिम्रो स्तुति गरिरहेका छौं। हामी दिनरात निरन्तर तिम्रो गुणगान गर्दछौं। हे अग्निदेव ! हामीलाई तिम्रो निकटता प्राप्त भइरहोस्।

**राजन्तमध्वराणां गोपामृतस्य दीदिविम्। वर्धमानं स्वे दमे ॥८॥**

प्रकाशयुक्त, यज्ञका रक्षक, सत्य वचनरूपी व्रतमा प्रेरित गर्ने, यज्ञस्थलमा हुर्कने, यज्ञले खुसी हुने अग्निदेवलाई स्तुति गर्दै हामी गृहस्थहरू उनका नजिक आएका छौं।

**स नः पितेव सूनवेऽग्ने सूपायनो भव। सचस्वा नः स्वस्तये ॥९॥**

हे गृहस्थका स्वामी अग्नि ! पुत्रले पितालाई सजिलै भेटेझैं हामी यजमानका लागि बिनाबाधा तिमी प्राप्त होऊ। हाम्रो कल्याणका लागि तिमी हाम्रा नजिकै रहिदेऊ।

[सूक्त - २]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - वायु इन्द्र मित्रावरुण। **छन्द** - गायत्री।

**वायवा याहि दर्शतेमे सोमा अरंकृताः। तेषां पाहि श्रुधी हवम् ॥१॥**

हे प्रियदर्शी वायु ! हाम्रो प्रार्थना सुनेर तिमी यज्ञस्थलमा आइदेऊ। तिम्रा निमित्त सोमरस तयार छ, यो पान गर भन्दै ऋषिहरूले वायुलाई प्रार्थना गरेका छन्।

**वाय उक्थेभिर्जरन्ते त्वामच्छा जरितारः। सुतसोमा अहर्विदः ॥२॥**

हे वायुदेव ! तिमी सोमरसका रक्षक हौ। प्रशंसकहरूले सोमरस र तिम्रा रक्षणकार्यको गुण जानेका छन्। उनीहरू स्तुति गान गर्दै तिम्रो प्रशंसा गर्नेछन्।

**वायो तव प्रपृञ्चती धेना जिगाति दाशुषे। उरूची सोमपीतये ॥३॥**

हे वायुदेव ! सोमरस चढाएर यज्ञ गर्ने यजमानहरू प्रभावकारी वाणीद्वारा तिमीबाट रक्षा गरिएका सोमरसको प्रशंसा गर्दै छन्। विशेष गुणगान गर्दै सोमरस पान गर्ने रहर भएकाले उनीहरू दाता बनेर बसेका तिम्रै नजिक पुगेका छन्।

**इन्द्रवायू इमे सुता उप प्रयोभिरा गतम्। इन्दवो वामुशन्ति हि ॥४॥**

हे इन्द्रदेव ! हे वायुदेव ! यो सोमरस तिमीहरूकै लागि पेलेर र निचोरेर तयार गरीकन राखिएको हो। तिमीहरू अन्न आदि पदार्थ आफूसित लिएर यहाँ आइदेओ, किनभने यस सोमरसले तिमीहरू दुवैलाई खोजिरहेको छ।

**वायविन्द्रश्च चेतथः सुतानां वाजिनीवसू। तावा यातमुप द्रवत ॥५ ॥**

हे वायुदेव ! हे इन्द्रदेव ! तिमीहरू दुवै अन्न आदि पदार्थका साथै धनले पनि परिपूर्ण छौ। तिमीहरू निचोरेर तयार राखिएको सोमरसको विशेषता जान्दछौ, त्यसैले चाँडै दुवै यस यज्ञमा आओ।

**वायविन्द्रश्च सुन्वत आ यातमुप निष्कृतम्। मक्ष्वि१त्था धिया नरा ॥६॥**

हे इन्द्र र वायुदेव ! तिमीहरू दुवै अत्यन्त शक्तिशाली छौ। तिमीहरू दुवै यजमानद्वारा बुद्धिमत्तापूर्वक सम्पादन गरिएका यज्ञमा सोमरसका नजिक अति चाँडै आइदेओ।

**मित्रं हुवे पूतदक्षं वरुणं च रिशादसम्। धियं घृताचीं साधन्ता ॥७॥**

घिउजस्तै जीवनमा शक्ति दिने र वर्षा गराउने मित्रवरुणदेवताहरूलाई हामी यज्ञमा आह्वान गर्दछौं। मित्रले हामीलाई बलशाली बनाऊन् र वरुणले हाम्रा हिंसक शत्रुहरू विनाश गरुन्।

**ऋतेन मित्रावरुणावृतावृधावृतस्पृशा। क्रतुं बृहन्तमाशाथे ॥८॥**

सत्यको उद्घाटन गर्ने सत्य यज्ञका पुष्टिकर्ता हे मित्रवरुणहरू हो ! तिमीहरू दुवैले हाम्रा पुण्यमय कर्महरूद्वारा सम्पन्न भएको यस सोमयागलाई सत्यले नै परिपूर्ण गर।

**कवी नो मित्रावरुणा तुविजाता उरुक्षया। दक्षं दधाते अपसम् ॥९॥**

अनेकौं कर्महरू सम्पन्न गर्ने र गराउने विवेकशील तथा अनेकौं स्थलमा निवास गर्ने मित्रावरुणले हाम्रो कार्यक्षमता सुदृढ पार्दछन्।

[सूक्त - ३]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - अश्विनीकुमार इन्द्र सरस्वती। **छन्द** - गायत्री।

**अश्विना यज्वरीरिषो द्रवत्पाणी शुभस्पती। पुरुभुजा चनस्यतम् ॥१॥**

विश्वामित्र आदि ऋषिहरूले अश्विनीकुमारहरूलाई सम्बोधन गर्दै भन्दछन्- हे बलिया पाखुराले काम गर्ने, चाँडै काम गर्ने र गराउन सक्ने अश्विनीकुमारहरू हो ! हामीले समर्पण गरेको हविष्यान्नबाट तिमीहरू पूर्ण रूपले सन्तुष्ट होओ।

**अश्विना पुरुदंससा नरा शवीरया धिया। धिष्ण्या वनतं गिरः ॥२॥**

धेरै खालका काम पूरा गर्ने र गराउने, धैर्य धारण गर्ने बानी भएका, अति बुद्धिमान, हे अश्विनीकुमारहरू हो ! तिमीहरू आफैं उत्तम बुद्धि भएका हुनाले हाम्रो प्रार्थनाको स्वर सुनेर त्यसलाई स्वीकार गर।

**दस्रा युवाकवः सुता नासत्या वृक्तबर्हिषः। आ यातं रुद्रवर्तनी ॥३॥**

रोग निको पार्ने, सधैं सत्य बोल्ने, रुद्रदेवजत्तिकै प्रतापी, सुन्दर अनुहार भएका हे दुवै अश्विनीकुमारहरू हो ! तिमीहरू यहाँ आएदेओ र ओछ्याइएका कुशका आसनमा बसेर सफासँग तयार गरिएको यो सोमरस पान गर।

**इन्द्रा याहि चित्रभानो सुता इमे त्वायवः। अण्वीभिस्तना पूतासः ॥४॥**
सोमवल्लीलाई ढुङ्गामा कुटेर, हातले निचोरेर रस निकाल्दा हातका औँलामाफवाट रस चुहिन्छ। ऋषिहरू इन्द्रलाई- हे अत्यन्त प्रभावशाली प्रकाशले युक्त इन्द्र ! निचोर्दाखेरि औँलाका बीचबाट चुहाइएको, उच्च कोटीको पवित्र यो सोमरस तिम्रै लागि हो। तिमी आएर पान गर भनेर विन्ति गर्दछन्।

**इन्द्रा याहि धियेषितो विप्रजूतः सुतावतः। उप ब्रह्माणि वाघतः ॥५॥**
हे उत्तम बुद्धि हुनेहरूले मात्र चिन्ने इन्द्रदेव ! ऋत्विक्हरू तिम्रा लागि सोमरस तयार गर्दै बोलाउँछन्। उनीहरूको स्तुति सुनेपछि यज्ञशालामा आऊ।

**इन्द्रा याहि तूतुजान उप ब्रह्माणि हरिवः। सुते दधिष्व नश्चनः ॥६॥**
हे अश्वयुक्त इन्द्रदेव ! तिमी आफ्नो प्रशंसा सुन्न र हामीबाट दिइएको हवि सेवन गर्नका लागि यस यज्ञशालामा चाँडै आइदेऊ।

**ओमासश्चर्षणीधृतो विश्वे देवास आ गत। दाश्वांसो दाशुषः सुतम् ॥७॥**
हे विश्वदेवहरू हो ! तिमीहरू सबैका रक्षक हौ र सबै प्राणीका आधार हौ। तिमीहरू नै सबै खालका ऐश्वर्य प्रदान गर्न सक्छौ। यजमानले सोमसहितको हवि दान गर्दै सम्पन्न गर्ने यस यज्ञहरूमा आइदेओ।

**विश्वे देवासो अप्तुरः सुतमा गन्त तूर्णयः। उस्रा इव स्वसराणि ॥८॥**
समयअनुसार वर्षा गराउने हे विश्वेदेवहरू हो ! तिमीहरू काम गर्न सिपालु र छिटाछरिता छौ। सूर्यको किरणजत्तिकै गतिशील भएर हामीलाई प्राप्त होओ।

**विश्वे देवासो अस्रिध एहिमायासो अद्रुहः। मेधं जुषन्त वह्नयः ॥९॥**
हे विश्वदेव ! तिमीलाई कसैले वध गर्न सक्दैन। तिमी काम गर्नमा सिपालु छौ र द्रोह नगर्ने हुनाले सुखदाता छौ। तिमी हाम्रा यज्ञमा उपस्थित भएर हवि सेवन गर।

**पावका नः सरस्वती वाजेभिर्वाजिनीवती। यज्ञं वष्टु धियावसुः ॥१०॥**
सरस्वतीले पवित्र बनाउँछिन्, पोषण दिन्छिन् र उनी बुद्धिमत्तापूर्वक ऐश्वर्य दान गर्छिन्। उनै देवी सरस्वतीले ज्ञान र कर्मद्वारा हाम्रो यज्ञ सफल गराइदिऊन्।

**चोदयित्री सूनृतानां चेतन्ती सुमतीनाम्। यज्ञं दधे सरस्वती ॥११॥**
सत्य र प्रिय वचन बोल्न सिकाउने र मेधावीहरूलाई यज्ञका लागि प्रेरणा दिने सरस्वती देवीले हाम्रो यो यज्ञ स्वीकार गरुन् र हामीलाई खोजेको जस्तै वैभव दिऊन्।

**महो अर्णः सरस्वती प्र चेतयति केतुना। धियो विश्वा वि राजति ॥१२॥**
नदीको रूप लिएर निरन्तर प्रशस्त जल बगाउने सरस्वती देवी धनले सम्पन्न पृथ्वीलाई जगाउँछिन्। उनै देवीले सबै याजकहरूलाई ज्ञानको तिखो ज्योति प्रदान गरुन्।

[सूक्त - ४]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - इन्द्र। **छन्द** - गायत्री।

**सुरूपकृत्नुमूतये सुदुघामिव गोदुहे। जुहूमसि द्यविद्यवि ॥१॥**
मिठो दुध दिने गाईलाई गोठालाले दिनहुँ बोलाएझैँ हामी विश्वामित्र आदि ऋषिहरू आफ्नो संरक्षणका लागि सुन्दर र यज्ञ सम्पन्न गर्ने इन्द्रलाई आह्वान गर्दछौँ।

**उप नः सवना गहि सोमस्य सोमपाः पिब। गोदा इद्रेवतो मदः ॥२॥**
सोमरस पान गर्ने हे इन्द्रदेव ! तिमी सोम ग्रहण गर्नका लागि हाम्रा यज्ञमा आऊ। यहाँ आएर हवन गरेको सोमरस पिइसकेपछि प्रसन्न होऊ। त्यसपछि याजकहरूलाई यश, वैभव र गाईहरू प्रदान गर।

**अथा ते अन्तमानां विद्याम सुमतीनाम्। मा नो अति ख्य आ गहि ॥३॥**
हे इन्द्रदेव ! तिमीले सोमपान गरिसकेपछि हामी तिम्रा अत्यन्त निकटवर्ती हुन्छौँ। श्रेष्ठ बुद्धियुक्त पुरुषको उपस्थिति भएपछि हामी तिम्रै विषयमा अधिक जानकारी प्राप्त गर्न पाउछौँ। हाम्रा अतिरिक्त अरूका अगाडि तिमी आफ्नो गोप्य स्वरूप प्रकट नगर।

**परेहि विग्रमस्तृतमिन्द्रं पृच्छा विपश्चितम्। यस्ते सखिभ्य आ वरम्॥४॥**

हे विद्वान्हरू हो ! विशिष्ट बुद्धि भएका र अपराजेय इन्द्रदेवसित गएर तिमीहरू आफ्ना स्वजनहरूका लागि धनऐश्वर्य प्राप्त होस् भनेर प्रार्थना गर।

**उत ब्रुवन्तु नो निदो निरन्यतश्चिदारत। दधाना इन्द्र इद्दुवः॥५॥**

इन्द्रको उपासना गर्ने उपासकले इन्द्रको निन्दा गर्नेहरूलाई आफ्ना बीचबाट निकालेर धेरै टाढा पुर्‍याइदिऊन्।

**उत नः सुभगाँ अरिर्वोचेयुर्दस्म कृष्टयः। स्यामेदिन्द्रस्य शर्मणि॥६॥**

हे इन्द्रदेव ! तिम्रो अनुग्रहबाट हामी सम्पूर्ण ऐश्वर्य प्राप्त गर्न सकौं। सबै आफन्त र बिरानाले त्यसैबाट हामीलाई सौभाग्यशाली ठानून्।

**एमाशुमाशवे भर यज्ञश्रियं नृमादनम्। पतयन्मन्दयत् सखम्॥७॥**

हे यजमानहरू हो ! यज्ञलाई ऐश्वर्यशाली बनाउने, प्रसन्नता प्रदान गर्ने र मित्रलाई आनन्द दिने यो सोमरस भरेर इन्द्रलाई अर्पण गर।

**अस्य पीत्वा शतक्रतो घनो वृत्राणामभवः। प्रावो वाजेषु वाजिनम्॥८॥**

हे सयौं यज्ञ सम्पन्न गर्ने इन्द्रदेव ! यही सोमरस पिएर तिमी वृत्तजस्तो मुख्य शत्रु संहार गर्न सक्ने हुन्छौ, त्यसैले तिमी युद्धका मैदानमा हाम्रा वीर योद्धाको रक्षा गर।

**तं त्वा वाजेषु वाजिनं वाजयामः शतक्रतो। धनानामिन्द्र सातये॥९॥**

हे सय यज्ञ गर्ने इन्द्रदेव ! युद्धमा बल प्रदान गर्ने धन तिमीबाट पाउनका लागि हामी राम्रो हविष्यान्न तिमीलाई अर्पित गर्दछौं।

**यो रायोऽवनिर्महान्त्सुपारः सुन्वतः सखा। तस्मा इन्द्राय गायत॥१०॥**

हे यजमानहरू हो ! तिमीहरू इन्द्रका लागि स्तोत्र गाउने गर। धन रक्षा गर्ने, दुःख हटाउने र यज्ञ गर्नेहरूसित मित्रजस्तै व्यवहार गर्ने उनी महान् छन्।

[सूक्त - ५]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - इन्द्र। **छन्द** - गायत्री।

**आ त्वेता नि षीदतेन्द्रमभि प्र गायत। सखायः स्तोमवाहसः॥१॥**

हे यज्ञ गर्ने मित्रहरू हो ! इन्द्रदेवलाई प्रसन्न गराउने उद्देश्यले प्रार्थना गर्नका लागि झट्टै आएर बस र हरेक किसिमले उनको स्तुति गर।

**पुरूतमं पुरूणामीशानं वार्याणाम्। इन्द्रं सोमे सचा सुते॥२॥**

हे याजक मित्रहरू हो ! सोमरस निचोरिसकेपछि सोमयज्ञमा सबै जम्मा भएर सामूहिक रूपले शत्रुलाई पराजित गराउने बल र ऐश्वर्यका स्वामी इन्द्रलाई सत्कार गरौं।

**स घा नो योग आ भुवत् स राये स पुरन्ध्याम्। गमद् वाजेभिरा स नः॥३॥**

हाम्रो पुरुषार्थ बढाउन इन्द्र सहायक होऊन्। धनधान्यले हामीलाई परिपूर्ण गराऊन् र ज्ञान प्राप्तिका बाटाहरू खुलाउँदै पोसिला खाद्यान्न लिएर उनी हामीकहाँ आऊन्।

**यस्य संस्थे न वृण्वते हरी समत्सु शत्रवः। तस्मा इन्द्राय गायत॥४॥**

हे याजकहरू हो ! जसका रथमा घोडा नारिएका छन्, सङ्ग्राममा त्यस रथका सामु शत्रु अडिन सक्दैनन्, तिनै इन्द्रदेवका गुणको बखान तिमीहरू गर।

**सुतपाव्ने सुता इमे शुचयो यन्ति वीतये। सोमासो दध्याशिरः॥५॥**

शुद्धसँग पेलेर दही मिसाएर पान गर्ने इच्छा गर्ने इन्द्रदेवलाई सोमरस प्राप्त होस्।

**त्वं सुतस्य पीतये सद्यो वृद्धो अजायथाः। इन्द्र ज्यैष्ठ्याय सुक्रतो॥६॥**

हे असल काम गर्ने इन्द्रदेव ! तिमी सोमरस पान गर्नका लागि र देवताहरूमा सर्वश्रेष्ठ हुनका लागि तत्काल वृद्ध रूपमा देखिन्छौ।

**आ त्वा विशन्त्वाशवः सोमास इन्द्र गिर्वणः। शं ते सन्तु प्रचेतसे॥७॥**

हे इन्द्रदेव ! तीन किसिमका यज्ञका सवनहरूमा आवश्यक पर्ने यो सोमरस तिम्रासामु उपस्थित भइरहोस् र तिम्रो ज्ञान सुखपूर्वक समृद्ध पारिरहोस्।

**त्वां स्तोमा अवीवृधन् त्वामुक्था शतक्रतो। त्वां वर्धन्तु नो गिरः ॥८॥**

हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! स्तोत्रहरूले तिम्रो उन्नति गरुन्। यस स्तोत्रका वचन र हाम्रा वाणीले तिम्रो महत्ता बढाऊन्।

**अक्षितोतिः सनेदिमं वाजमिन्द्रः सहस्रिणम्। यस्मिन् विश्वानि पौंस्या ॥९॥**

रक्षा गर्नुपर्ने हुनाले सधैं जोगाएर राखिएको, इन्द्रदेवबाट बल तथा पराक्रम प्रदान गरिएको र विविध रूपमा रहने गरेको सोमरूपी अन्न हामी पनि सेवन गरौं।

**मा नो मर्ता अभि द्रुहन् तनूनामिन्द्र गिर्वणः। ईशानो यवया वधम् ॥१०॥**

हे स्तुति गरिने इन्द्रदेव ! हाम्रा शरीरमा कुनै पनि शत्रुले क्षति नगरोस्, हामीलाई कसैले घात नगरोस् भनेर तिमी हाम्रो संरक्षक भइदेऊ।

## [सूक्त - ६]

**ऋषि - मधुच्छन्दा वैश्वामित्र। देवता - इन्द्र मरुद्गण। छन्द - गायत्री।**

**युञ्जन्ति ब्रध्नमरुषं चरन्तं परि तस्थुषः। रोचन्ते रोचना दिवि ॥१॥**

द्युलोकमा आदित्य, भूमिमा अहिंसक अग्नि, अन्तरिक्षमा सर्वत्र भ्रमणशील वायुका रूपमा इन्द्र उपस्थित छन्। उनलाई तीनै लोकका प्राणीहरूले आआफ्ना कार्यमा देवत्व रूपले सम्बद्ध रहेको मान्दछन्। द्युलोकमा देखा पर्ने ग्रहनक्षत्र आदि उनै इन्द्रदेवकै स्वरूपका अंश हुन्।

**युञ्जन्त्यस्य काम्या हरी विपक्षसा रथे। शोणा धृष्णू नृवाहसा ॥२॥**

इन्द्रदेवका रथमा दुवैतिर राता वर्णका सङ्घर्षशील दुई वटा घोडा नारिएका छन्। तिनले मानिसलाई गति प्रदान गर्दछन्।

**केतुं कृण्वन्नकेतवे पेशो मर्या अपेशसे। समुषद्भिरजायथाः ॥३॥**

हे मनुष्यहरू ! तिमी राति निद्रामा मग्न हुन्छौ। त्यस बेला चेतनाहीन भए पनि बिहान फेरि सचेत हुँदै मानौं प्रत्येक दिन नयाँ जीवन पाउँछौ।

**आदह स्वधामनु पुनर्गर्भत्वमेरिरे। दधाना नाम यज्ञियम् ॥४॥**

यज्ञजस्तै नाम कमाउने मरुत्हरू अन्नको कामना गर्दै बारम्बार विभिन्न गर्भमा पस्दछन्।

**वीडु चिदारुजत्नुभिर्गुहा चिदिन्द्र वह्निभिः। अविन्द उस्रिया अनु ॥५॥**

हे इन्द्रदेव ! बलिया खालका किल्लाबन्दी भत्काउन सक्ने, तिनै तेजस्वी मरुत्हरूका सहयोगले तिमीले गुफामा लुकाइएका गाई खोजेर निकाल्यौ।

**देवयन्तो यथा मतिमच्छा विदद्वसुं गिरः। महामनूषत श्रुतम् ॥६॥**

देवताको पद पाउने आशा गर्ने ऋत्विक्हरू बुद्धिमत्तापूर्वक महान् यशस्वी, ऐश्वर्यशाली र वीर मरुद्गणको स्तुति गर्दछन्।

**इन्द्रेण सं हि दृक्षसे सञ्जग्मानो अबिभ्युषा। मन्दू समानवर्चसा ॥७॥**

मरुद्हरू सधैं प्रसन्न रहन्छन्। उनीहरू सबै समान तेज भएका छन् र नडराउने खालका छन्। तिनीहरू इन्द्रसँगै रहेको हुनाले सुहाउँदा देखिन्छन्।

**अनवद्यैरभिद्युभिर्मखः सहस्वदर्चति। गणैरिन्द्रस्य काम्यैः ॥८॥**

यस यज्ञमा निर्दोष, दीप्तिमान् र खोजेको पुऱ्याइदिने शक्ति भएका मरुद्हरूका साथी इन्द्रका शक्तिको पूजा गरिन्छ।

**अतः परिज्मन्ना गहि दिवो वा रोचनादधि। समस्मिन्नृञ्जते गिरः ॥९॥**

हे सबैतिर पुग्ने मरुत्हरू हो ! तिमीहरू यज्ञमा हाम्रा वाणीले तिमीहरूको स्तुति गरेको हुनाले तिमीहरू अन्तरिक्ष, आकाश वा प्रकाशयुक्त द्युलोकबाट यहाँ आएका छौ।

**इतो वा सातिमीमहे दिवो वा पार्थिवादधि। इन्द्रं महो वा रजसः ॥१०॥**

पृथ्वी, अन्तरिक्ष वा द्युलोकबाट वा अरू नै लोकबाट पनि मनग्गे धन प्राप्त गराइदिऊन् भनेर हामी इन्द्रदेवको प्रार्थना गर्दछौं।

[सूक्त - ७]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - इन्द्र। **छन्द** - गायत्री।

**इन्द्रमिद् गाथिनो बृहदिन्द्रमर्केभिरर्किणः। इन्द्रं वाणीरनूषत॥१॥**

सामवेदको गानमा साधना गर्ने साधकहरू गाउन योग्य स्तुति गाथाले देवराज इन्द्रलाई प्रसन्न गर्दै छन्। यज्ञ गर्ने याज्ञिकहरू पनि मन्त्रोच्चारण गर्दै इन्द्रको प्रार्थना गर्दै छन्।

**इन्द्र इद्धर्योः सचा सम्मिश्ल आ वचोयुजा। इन्द्रो वज्री हिरण्ययः॥२॥**

इन्द्र रथमा घोडा आफूखुसी नार्न सक्छन् र उनले हातमा वज्र लिएका छन्। सुनका वस्त्र र गहनाले सजिएका इन्द्रदेवले घोडा पालेका छन्, ती घोडाहरू इन्द्रले भन्नासाथ भेला भएर आफैं रथमा नारिने खालका छन्।

**इन्द्रो दीर्घाय चक्षस आ सूर्यं रोहयद् दिवि। वि गोभिरद्रिमैरयत्॥३॥**

देवशक्तिलाई सङ्गठित गराउने इन्द्रदेवले विश्वलाई प्रकाशित गर्ने महान् उद्देश्यले सूर्यदेवलाई आकाशको उचाइमा स्थापित गराएका छन्। सूर्यले आफ्ना किरणद्वारा विश्वमा भएका सबै पर्वत आदि वस्तुहरूको सबैले दर्शन गरुन् भनेर प्रेरित गर्दछन्।

**इन्द्र वाजेषु नोऽव सहस्रप्रधनेषु च। उग्र उग्राभिरूतिभिः॥४॥**

हे वीर इन्द्रदेव ! हजारौं प्रकारका धन लाभ गराउने हुनाले सानाठूला सबै लडाइँमा तिमी वीरतापूर्वक हाम्रो रक्षा गर।

**इन्द्रं वयं महाधन इन्द्रमर्भे हवामहे। युजं वृत्रेषु वज्रिणम्॥५॥**

हामी सानाठूला सबै खालका प्राणीहरू इन्द्रदेवलाई सङ्ग्राममा सहयोगका निम्ति बोलाउँछौं। वृत्तासुरको विनाश गर्नका लागि उनले हातमा वज्र लिएका छन्।

**स नो वृषन्नमुं चरुं सत्रादावन्नपा वृधि। अस्मभ्यमप्रतिष्कुतः॥६॥**

हे देवेन्द्र ! तिमी सधैंका दानशील र अपराजित हुनाले हामीलाई पानीको वर्षा गराऊ।

**तुञ्जेतुञ्जे य उत्तरे स्तोमा इन्द्रस्य वज्रिणः। न विन्धे अस्य सुष्टुतिम्॥७॥**

वज्रधारी र दान गर्न सक्षम दानी इन्द्रको तुलना अन्यत्र कसैसँग गर्न सकिँदैन। प्रत्येक दानका समयमा इन्द्रदेवको योभन्दा उत्तम स्तुति गर्न हामी समर्थ छैनौं।

**वृषा यूथेव वंसगः कृष्टीरियर्त्योजसा। ईशानो अप्रतिष्कुतः॥८॥**

इन्द्रदेव हामी सबैका रक्षक हुन्। उनी शक्तिसम्पन्न छन् तर हाम्रा विरुद्ध कार्य गर्दैनन्। उनी आफ्नो सामर्थ्यअनुसारको सहायता पुऱ्याउनका लागि मानिसहरूका नजिक उसरी पस्छन्, जसरी साँढे गाईका बथानमा पस्छ।

**य एकश्चर्षणीनां वसूनामिरज्यति। इन्द्रः पञ्च क्षितीनाम्॥९॥**

हे इन्द्रदेव ! तिमी सबै ऐश्वर्य तथा सम्पदाका एक मात्र स्वामी हौ। ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र र निषाद यी पाँचै श्रेणीका मानिसका स्वामी पनि तिमी नै हौ।

**इन्द्रं वो विश्वतस्परि हवामहे जनेभ्यः। अस्माकमस्तु केवलः॥१०॥**

हे ऋत्विक्हरू ! हे जयमानहरू ! तिमीहरू सबै मानिसहरूमा उत्तम हौ। तिमीहामी मिलेर सबैको कल्याणका लागि इन्द्रदेवलाई आमन्त्रित गरेका हौं। उनले हामीमाथि विशेष कृपा गरुन् भन्ने प्रार्थना गरौं।

[सूक्त - ८]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - इन्द्र। **छन्द** - गायत्री।

**एन्द्र सानसिं रयिं सजित्वानं सदासहम्। वर्षिष्ठमूतये भर॥१॥**

हे इन्द्रदेव ! तिमी हाम्रो जीवन संरक्षण गर र शत्रु परास्त गर्न ऐश्वर्यले समृद्ध गराऊ।

**नि येन मुष्टिहत्यया नि वृत्रा रुणधामहै। त्वोतासो न्यर्वता॥२॥**

त्यसै ऐश्वर्यको प्रभाव तथा तिमीले पालेका अश्वहरूका सहयोगले हामी शक्तिशाली होऔं र त्यसै शक्तिले प्रहार गरेर शत्रुहरू भगाऔं।

**इन्द्र त्वोतास आ वयं वज्रं घना ददीमहि। जयेम सं युधि स्पृधः॥३॥**

हे इन्द्रदेव ! हामीलाई तिमी संरक्षित गर। हामी वज्रजस्तै धारिला अस्त्र धारण गरौं। युद्धमा कस्सिँदै आउने शत्रुमाथि हामी विजय प्राप्त गरौं।

**वयं शूरेभिरस्तृभिरिन्द्र त्वया युजा वयम्। सासह्याम पृतन्यतः ॥४॥**
हे इन्द्रदेव ! वीरहरूलाई तिमीले सुरक्षा दिएका छौ। तिनीहरू शस्त्र चलाउन सिपालु छन्। तिनै वीरहरूका सहयोगले हामी आफ्ना शत्रुहरूलाई पराजित गरौं।

**महाँ इन्द्रः परश्च नु महित्वमस्तु वज्रिणे। द्यौर्न प्रथिना शवः ॥५॥**
इन्द्रदेव श्रेष्ठ र महान् छन्। वज्रधारी इन्द्रदेवको यश द्युलोकजत्तिकै व्यापक बनेर फैलिएको छ। उनका बलको प्रशंसा चारै दिशामा होओस्।

**समोहे वा य आशत नरस्तोकस्य सनितौ। विप्रासो वा धियायवः ॥६॥**
सङ्ग्राममा जुट्ने, सन्तानको सुधारमा लाग्ने र बुद्धिमत्तापूर्वक ज्ञान प्राप्त गर्न खोज्ने सबैले इन्द्रदेवको स्तुति गर्दछन्। त्यस स्तुतिबाट उनीहरूले खोजेजस्तै फल पाउँछन्।

**यः कुक्षिः सोमपातमः समुद्र इव पिन्वते। उर्वीरापो न काकुदः ॥७॥**
अत्यधिक सोमपान गर्ने इन्द्रदेवको पेट समुद्रजत्तिकै विशाल छ। त्यही सोमरस जिब्राबाट प्रवाहित हुने साहित्यको नवरसझैं सधैं रसाइरहेको हुन्छ।

**एवा ह्यस्य सूनृता विरप्शी गोमती मही। पक्वा शाखा न दाशुषे ॥८॥**
इन्द्रदेवका मधुर एवं सत्य वचन सुखदायी छन्। तिनले हविदातालाई सुख दिन्छन्। त्यो सुख गाई दान गर्ने यजमानले दिएको जस्तै अथवा हाँगाभरि पाकेका फल भएका रुखले दिएको जस्तै हुन्छ।

**एवा हि ते विभूतय ऊतय इन्द्र मावते। सद्यश्चित् सन्ति दाशुषे ॥९॥**
हे देवेन्द्र ! विभूतिहरू हितकारी हुन्छन् र तिनले हाम्रो संरक्षण गर्दछन्। जसले जस्ता विभूतिहरू प्रदान गर्दछन्, तिनको फल उनीहरूलाई नै तत्काल प्राप्त हुने गर्दछ।

**एवा ह्यस्य काम्या स्तोम उक्थं च शंस्या। इन्द्राय सोमपीतये ॥१०॥**
दाताका स्तुतिहरू र मधुर वचन मनोरम र प्रशंसनीय छन्। यी सबै सोमपान गर्ने इन्द्रदेवका लागि नै हुन्।

## [सूक्त - ९]

ऋषि - मधुच्छन्दा वैश्वामित्र। देवता - इन्द्र। छन्द - गायत्री।

**इन्द्रेहि मत्स्यन्धसो विश्वेभिः सोमपर्वभिः। महाँ अभिष्टिरोजसा ॥१॥**
हे इन्द्रदेव ! सोमरूपी अन्नले तिमी प्रफुल्लित हुन्छौ। त्यसैले तिमी आफ्ना शक्तिले दुष्ट शत्रुमाथि विजय प्राप्त गर्दछौ। विजयश्रीले आफूलाई वरण गरुन् भनेर क्षमता आर्जन गर्न तिमी यज्ञशालामा आऊ।

**एमेनं सृजता सुते मन्दिमिन्द्राय मन्दिने। चक्रिं विश्वानि चक्रये ॥२॥**
हे याजकहरू ! प्रसन्नता दिने सोमरस निचोरेर तयार गर। सम्पूर्ण कार्यहरू पूरा गर्ने इन्द्रदेवको सामर्थ्य बढाइदिने यो सोमरस उनैलाई अर्पित गर।

**मत्स्वा सुशिप्र मन्दिभिः स्तोमेभिर्विश्वचर्षणे। सचैषु सवनेष्वा ॥३॥**
हे उत्तम शस्त्रहरूले सुसज्जित, सबैतिर देख्ने इन्द्रदेव ! हाम्रा यस यज्ञमा तिमी आऊ। तिमीलाई खुसी पार्ने स्तोत्रहरू सुनेर खुसी होऊ।

**असृग्रमिन्द्र ते गिरः प्रति त्वामुदहासत। अजोषा वृषभं पतिम् ॥४॥**
हे इन्द्रदेव ! तिम्रो स्तुति गर्नका लागि हामीले स्तोत्र रचना गरेका छौं। हे बलशाली र पालनकर्ता इन्द्रदेव ! स्तुतिका साथमा हामीले गरेको प्रार्थना तिमी स्वीकार गर।

**सं चोदय चित्रमर्वाग्राध इन्द्र वरेण्यम्। असदित्ते विभु प्रभु ॥५॥**
हे इन्द्रदेव ! तिमी नै विपुल ऐश्वर्यका अधिपति हौ। त्यसो हुँदा विविध प्रकारका श्रेष्ठ ऐश्वर्यतिर हामीलाई प्रेरित गर।अनि हामीलाई महान् ऐश्वर्य प्रदान गर।

**अस्मान्त्सु तत्र चोदयेन्द्र राये रभस्वतः। तुविद्युम्न यशस्वतः ॥६॥**
हे प्रशस्त ऐश्वर्यले सम्पन्न इन्द्रदेव ! तिमी वैभव प्राप्तिका लागि हामीलाई उत्तम कर्ममा प्रेरित गर। त्यसबाट हामी परिश्रमी र यशस्वी बन्न सकौं।

**सं गोमदिन्द्र वाजवदस्मे पृथु श्रवो बृहत्। विश्वायुर्धेह्यक्षितम् ॥७॥**
हे इन्द्रदेव ! तिमी हामीलाई गाई, धनधान्यले युक्त अपार वैभव र अक्षय आयु देऊ।

**अस्मे धेहि श्रवो बृहद् द्युम्नं सहस्रसातमम्। इन्द्र ता रथिनीरिषः ॥८॥**

हे इन्द्रदेव ! हामीलाई तिमी प्रशस्त यश एवं विपुल ऐश्वर्य प्रदान गर र धेरै वटा रथ भरेर अन्न आदि प्रदान गर।

**वसोरिन्द्रं वसुपतिं गीर्भिर्गृणन्त ऋग्मियम्। होम गन्तारमूतये ॥९॥**

धनका अधिपति, ऐश्वर्यका स्वामी इन्द्रलाई हामी ऋचाहरूले स्तुति गर्दछौं। उनलाई हामी स्तुति गर्दै आह्वान गर्दछौं। यज्ञमा आएर उनले हाम्रा ऐश्वर्यको रक्षा गरुन्।

**सुतेसुते न्योकसे बृहद् बृहत एदरिः। इन्द्राय शूषमर्चति ॥१०॥**

यज्ञस्थलमा सोम तयार गर्दै यज्ञकर्ताहरू इन्द्रदेवका पराक्रमको प्रशंसा गर्दछन्।

[सूक्त - १०]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - इन्द्र। **छन्द** - अनुष्टुप्।

**गायन्ति त्वा गायत्रिणोऽर्चन्त्यर्कमर्किणः।**
**ब्रह्माणस्त्वा शतक्रत उद्वंशमिव येमिरे ॥१॥**

हे सय यज्ञ गरेर शतक्रतु नाम पाएका इन्द्रदेव ! उच्च स्वरले गाउने भएर उद्गाता नाम पाएकाहरूले तिमीलाई आह्वान गरिरहेका छन्। स्तुति गर्ने स्तोताहरूले तिमीलाई पूज्य मानेर मन्त्रोच्चारणद्वारा आदर गर्दछन्। बाँसका चोकेमाथि चढेर चटक देखाउने नट वा नर्तकजस्ता ब्रह्मा नामका ऋत्विक्ले श्रेष्ठ स्तुतिगान गर्दै तिमीलाई प्रोत्साहित गर्छन्।

**यत्सानोः सानुमारुहद् भूर्यस्पष्ट कर्त्वम्।**
**तदिन्द्रो अर्थं चेतति यूथेन वृष्णिरेजति ॥२॥**

यजमानहरू सोमवल्ली वा समिधा आदि खोज्दै पर्वतका एउटा टाकुराबाट अर्को टाकुरामा पुग्दै यज्ञ गर्दा उनीहरूका मनको रहर बुझ्ने र खोजेको कुरो दिने इन्द्रदेव यज्ञमा जान तयार हुन्छन्।

**युक्ष्वा हि केशिना हरी वृषणा कक्ष्यप्रा।**
**अथा न इन्द्र सोमपा गिरामुपश्रुतिं चर ॥३॥**

हे सोमरस ग्रहण गर्ने इन्द्रदेव ! लामो जगर भएका, शक्तिशाली र लक्ष्यसम्म पुर्‍याउने दुई वटा घोडा तिमी रथमा नार। अनि सोमपानले तृप्त हुँदै हामीले गरेको प्रार्थना सुन।

**एहि स्तोमाँ अभि स्वराभि गृणीह्या रुव।**
**ब्रह्म च नो वसो सचेन्द्र यज्ञं च वर्धय ॥४॥**

हे सबै ठाउँमा निवास गर्ने इन्द्रदेव ! हाम्रो स्तुति सुनेपछि उद्गाता, होता र अध्वर्युहरूलाई प्रशंसाले प्रोत्साहित गर।

**उक्थमिन्द्राय शंस्यं वर्धनं पुरुनिष्षिधे।**
**शक्रो यथा सुतेषु णो रारणत् सख्येषु च ॥५॥**

हे स्तोताहरू हो ! शत्रुसंहारक, सामर्थ्यवान्, इन्द्रदेवका लागि उनको यश बढाउने, उत्तम स्तोत्र पाठ गर। त्यसो गर्दा उनको कृपा हाम्रा सन्तान र आफन्तहरूमा स्थिर भएर रहनेछ।

**तमित् सखित्व ईमहे तं राये तं सुवीर्ये।**
**स शक्र उत नः शकदिन्द्रो वसु दयमानः ॥६॥**

हामी इन्द्रदेवलाई मित्रता, धन, बल र असल सन्तान प्राप्तिका लागि स्तुति गरौं। इन्द्रदेवले हामीलाई बल एवं धन प्रदान गर्दै संरक्षित गर्नेछन्।

**सुविवृतं सुनिरजमिन्द्र त्वादातमिद्यशः।**
**गवामप व्रजं वृधि कृणुष्व राधो अद्रिवः ॥७॥**

हे इन्द्रदेव ! तिमीले प्रदान गरेको यश सबै दिशामा राम्ररी फैलिएको छ। हे वज्रधारी इन्द्रदेव ! गोठबाट छोडिएका गाईहरूझैं हाम्रो धन पनि सबैतिर फिँजाइदेऊ।

**नहि त्वा रोदसी उभे ऋघायमाणमिन्वतः।**
**जेषः स्वर्वतीरपः सं गा अस्मभ्यं धूनुहि ॥८॥**

हे इन्द्रदेव ! युद्धका बेलामा तिम्रो ख्याति पृथ्वीदेखि द्युलोकसम्म फैलिन्छ। दिव्य जलधारा बगाउने अधिकार तिम्रै हो। त्यसले सेचन गरी हामीलाई सन्तोष देऊ।

आश्रुत्कर्ण श्रुधी हवं नू चिद्दधिष्व मे गिरः।
इन्द्र स्तोममिमं मम कृष्वा युजश्चिदन्तरम् ॥९॥

भक्तहरूको स्तुतिगान सुन्ने हे इन्द्रदेव ! हाम्रो आह्वान सुन। हाम्रा भनाइ मनमा गुन। हाम्रा स्तोत्रलाई आफ्ना मित्रहरूको वचनभन्दा पनि बढी प्रेमपूर्वक धारण गर।

विद्मा हि त्वा वृषन्तमं वाजेषु हवनश्रुतम्।
वृषन्तमस्य हूमह ऊतिं सहस्रसातमाम् ॥१०॥

हे इन्द्रदेव ! तिमी बलले सम्पन्न छौ भनेर हामी जान्दछौं। युद्धमा हाम्रो गुहार तिमी सुन्दछौ। हे बलशाली इन्द्रदेव ! सहस्रौं प्रकारका धन र तिम्रो संरक्षण हामी चाहन्छौं।

आ तू न इन्द्र कौशिक मन्दसानः सुतं पिब।
नव्यमायुः प्र सू तिर कृधी सहस्रसामृषिम् ॥११॥

हे कुशिकपुत्र कौशिक ! हे इन्द्रदेव ! यसरी निकालिएको सोमरस पान गर्न तिमी फट्टै हामीकहाँ आऊ। हामीलाई काम गर्ने सामर्थ्यका साथै नवीन आयु देऊ र यी ऋषिलाई विशेष प्रकारका धनले समृद्ध गराऊ।

परि त्वा गिर्वणो गिर इमा भवन्तु विश्वतः।
वृद्धायुमनु वृद्धयो जुष्टा भवन्तु जुष्टयः ॥१२॥

हे प्रशंसित इन्द्रदेव ! हामीबाट गरिएका स्तुतिले सबै तिरबाट तिम्रो आयु बढाउँदै तिमीलाई यशस्वी गराओस्। तिमीबाट स्वीकृत यी स्तुतिहरू हामीलाई थप आनन्द दिनका लागि सहायक होऊन्।

[सूक्त - ११]

ऋषि - जेतामाधुच्छन्दस। देवता - इन्द्र। छन्द - अनुष्टुप्।

इन्द्रं विश्वा अवीवृधन्त्समुद्रव्यचसं गिरः।
रथीतमं रथीनां वाजानां सत्पतिं पतिम् ॥१॥

समुद्रजस्तै व्यापक, रथीहरूमा महानतम, अन्नका स्वामी र सत्प्रवृत्ति भएका इन्द्रलाई सबै स्तुतिले उन्नतिशील गराउँछन्।

सख्ये त इन्द्र वाजिनो मा भेम शवसस्पते।
त्वामभि प्र णोनुमो जेतारमपराजितम् ॥२॥

हे बलका रक्षक इन्द्रदेव ! तिम्रो मित्रताले हामी बलशाली बनौं र कसैसित नडराऔं। हे अपराजेय, विजयी इन्द्रदेव ! हामी साधकहरू तिमीलाई प्रणाम गर्दछौं।

पूर्वीरिन्द्रस्य रातयो न वि दस्यन्त्यूतयः।
यदी वाजस्य गोमतः स्तोतृभ्यो मंहते मघम् ॥३॥

देवराज इन्द्रको दानशीलता अविच्छिन्न छ। यजमानले स्तोताहरूलाई गाईसहित अन्न दान गर्दछन् र इन्द्रदेवले सधैं सबैको सुरक्षा गर्नेछन्।

पुरां भिन्दुर्युवा कविरमितौजा अजायत।
इन्द्रो विश्वस्य कर्मणो धर्ता वज्री पुरुष्टुतः ॥४॥

शत्रुको सहर नष्ट गर्ने इन्द्रदेव सधैंका युवा, सबैका ज्ञाता, सबैभन्दा शक्तिशाली, शुभकर्मका आश्रय र कीर्तियुक्त भएर विविध गुणले सम्पन्न छन्।

त्वं वलस्य गोमतोऽपावरद्रिवो बिलम्।
त्वां देवा अबिभ्युषस्तुज्यमानास आविषुः ॥५॥

हे वज्रधारी इन्द्रदेव ! तिमीले गाई चोर्ने असुरका व्यूह नष्ट गराइदियौ। असुरहरूबाट पराजित भएका देवताहरू तिमीसँग आएर सङ्गठित भए।

तवाहं शूर रातिभिः प्रत्यायं सिन्धुमावदन्।
उपातिष्ठन्त गिर्वणो विदुष्टे तस्य कारवः ॥६॥

हे सङ्ग्राममा शूर इन्द्रदेव ! तिम्रो दानशीलताबाट आकर्षित भएर हामी होताहरू तिमीसित आएका छौं। हे स्तुत्य इन्द्रदेव ! सोमयागमा प्रशंसा गर्ने यी ऋत्विक् एवं यजमानहरूले तिम्रो दानशीलताका विषयमा जानेका छन्।

मायाभिरिन्द्र मायिनं त्वं शुष्णमवातिरः ।
विदुष्टे तस्य मेधिरास्तेषां श्रवांस्युत्तिर ॥७॥

हे इन्द्रदेव ! तिमीले आफ्ना मायाले धर्तीको रस सुकाउने भएकाले शुष्ण नाम दिइएका राक्षसलाई पराजित गर्‍यौ। जुन बुद्धिमान्ले तिम्रा त्यस्तो मायाका विषयमा जानेका छन्, तिनीहरूलाई यश र बल दिएर तिमी बलियो बनाऊ।

इन्द्रमीशानमोजसाभि स्तोमा अनूषत।
सहस्रं यस्य रातय उत वा सन्ति भूयसीः ॥८॥

असङ्ख्य किसिमले दान गर्ने दानीहरू ओजबल र पराक्रम भएका कारण संसारका नेता मानिएका इन्द्रदेवलाई स्तोत्रले स्तुति गर्न थाले।

[सूक्त - १२]

ऋषि - मेधातिथि काण्व। देवता - अग्नि। छन्द - गायत्री।

अग्निं दूतं वृणीमहे होतारं विश्ववेदसम्। अस्य यज्ञस्य सुक्रतुम् ॥१॥

हे सर्वज्ञाता अग्निदेव ! तिमी यज्ञका विधाता हौ। सम्पूर्ण देवशक्तिलाई सन्तुष्ट राख्न तिमी समर्थ छौ। यज्ञको विधि र व्यवस्थाका स्वामी तिमी नै हौ। यस्तो सामर्थ्य भएका तिमीलाई हामी देवदूतका रूपमा स्वीकार गर्दछौं।

अग्निमग्निं हवीमभिः सदा हवन्त विश्पतिम्। हव्यवाहं पुरुप्रियम् ॥२॥

हे प्रजापालक, देवलोकसम्म हवि पुर्‍याइदिने, परमप्रिय, कुशल नेतृत्वदायी अग्निदेव ! हामी याजकहरू हवन गर्दा पाठ गरिने मन्त्रहरूले सधैं तिमीलाई बोलाउँछौं।

अग्ने देवाँ इहा वह जज्ञानो वृक्तबर्हिषे। असि होता न ईड्यः ॥३॥

हे स्तुति गर्नयोग्य अग्निदेव ! तिमी अरणी मन्थनबाट उत्पन्न भएका हौ। यजमानहरू कुशका आसन ओछ्याएर बसेका छन्, तिनीहरूप्रति कृपा गर्दै देवताहरूलाई बोलाऊ। ती देवताहरूले यस यज्ञमा हवि ग्रहण गरून्।

ताँ उशतो वि बोधय यदग्ने यासि दूत्यम्। देवैरा सत्सि बर्हिषि ॥४॥

हे अग्निदेव ! तिमी हविको कामना गर्ने देवताहरूलाई यज्ञमा बोलाऊ र यो कुशका आसनमा देवताहरूका साथ बस।

घृताहवन दीदिवः प्रति ष्म रिषतो दह। अग्ने त्वं रक्षस्विनः ॥५॥

घिउको आहुतिले दन्किने हे अग्निदेव ! तिमी राक्षसी प्रवृत्ति भएका शत्रुहरूलाई पूर्ण रूपले भस्म गरिदेऊ।

अग्निनाग्निः समिध्यते कविर्गृहपतिर्युवा। हव्यावाड् जुह्वास्यः ॥६॥

काठले मन्थन गर्दै यज्ञका लागि अग्नि उत्पन्न गरेर प्रज्ज्वलित गरिन्छ। त्यस्ता अग्नि यज्ञस्थलको रक्षा गर्ने, दूरदर्शी, चिरयुवा, देवताहरूसमक्ष आहुति पुर्‍याउने, ज्वालायुक्त र आह्वान गर्न योग्य हुन्छन्।

कविमग्निमुप स्तुहि सत्यधर्माणमध्वरे। देवममीवचातनम् ॥७॥

हे ऋत्विकहरू हो ! लोकहितकारी यज्ञमा रोग नष्ट गराउने ज्ञानवान् अग्निदेवको स्तुति तिमीहरू विशेष रूपले गर।

यस्त्वामग्ने हविष्पतिर्दूतं देव सपर्यति। तस्य स्म प्राविता भव ॥८॥

हे देवतासमक्ष हविष्यान्न पुर्‍याइदिने अग्निदेव ! तिमीजस्ता देवदूतको उत्तम रीतिले अर्चना गर्ने याजकलाई तिमी राम्रोसँग सुरक्षा गर।

यो अग्निं देववीतये हविष्माँ आविवासति। तस्मै पावक मृडय ॥९॥

पवित्र गराउने अग्निदेव ! देवतालाई हवि प्रदान गर्नका लागि तिमीसित प्रार्थना गर्ने यजमानलाई सुखी बनाऊ।

स नः पावक दीदिवोऽग्ने देवाँ इहा वह। उप यज्ञं हविश्च नः ॥१०॥

हे पवित्र गराउने र दीप्तिमान् अग्निदेव ! तिमी देवताहरूलाई हाम्रा यज्ञमा हवि ग्रहण गर्नका लागि लिएर आऊ।

**स नः स्तवान आ भर गायत्रेण नवीयसा। रयिं वीरवतीमिषम् ॥११॥**

हे अग्निदेव ! नवीनतम गायत्री छन्दका सूक्तले तिम्रो स्तुति गरिन्छ। हामीलाई पुत्र आदि ऐश्वर्य र बलयुक्त अन्न मनग्गे प्रदान गर।

**अग्ने शुक्रेण शोचिषा विश्वाभिर्देवहूतिभिः। इमं स्तोमं जुषस्व नः ॥१२॥**

हे अग्निदेव ! तिमी आफ्नो कान्तिमान् दीप्तिका प्रभावले देवताहरूलाई बोलाउँछौ। त्यसका लागि हाम्रो स्तुति स्वीकार गर।

## [सूक्त - १३]

**ऋषि** - मेधातिथि काण्व। **देवता** - इध्म अग्नि इडा सरस्वती भारती। **छन्द** - गायत्री।

**सुसमिद्धो न आ वह देवाँ अग्ने हविष्मते। होतः पावक यक्षि च ॥१॥**

हे पवित्रकर्ता तथा यज्ञ सम्पादनकर्ता अग्निदेव ! राम्ररी प्रज्वलित होऊ र यजमानको कल्याण गर्नका लागि देवताहरूलाई आह्वान गर। तिनै देवताहरूलाई लक्ष्य गरेर हाम्रो यज्ञ सम्पन्न गराऊ अनि देवताहरूको पोषणका लागि हविष्यान्न ग्रहण गर।

**मधुमन्तं तनूनपाद् यज्ञं देवेषु नः कवे। अद्या कृणुहि वीतये ॥२॥**

हे ऊर्ध्वगामी, मेधावी अग्निदेव ! हाम्रो रक्षा गर्नका लागि प्राणवर्द्धक मधुर हवि देवतालाई प्राप्त हुने गरी पुऱ्याइदेऊ।

**नराशंसमिह प्रियमस्मिन् यज्ञ उप ह्वये। मधुजिह्वं हविष्कृतम्। ३ ॥**

देवताहरूका प्रिय र आनन्ददायक मधुजिह्व नामका अग्निदेवलाई यस यज्ञमा हामी आह्वान गर्दछौं। देवतासम्म हाम्रो हवि पुऱ्याइदिने हुनाले उनी स्तुति गर्न योग्य छन्।

**अग्ने सुखतमे रथे देवाँ ईडित आ वह। असि होता मनुर्हितः ॥४॥**

हे सम्पूर्ण मानवका हितैषि अग्निदेव ! तिमी आफ्ना श्रेष्ठ एवं सुखदायी रथमा देवताहरूलाई लिएर यस यज्ञस्थलमा आइदेऊ। हामी तिम्रो वन्दना गर्दछौं।

**स्तृणीत बर्हिरानुषग् घृतपृष्ठं मनीषिणः। यत्रामृतस्य चक्षणम् ॥५॥**

हे मेधावी पुरुषहरू हो ! यस यज्ञमा घिउको पात्र राख्न सकिने गरी परस्पर मिलाएर कुशका आसन राख। त्यस अमृतजस्ता घिउको दर्शन राम्ररी हुन सकोस्।

**वि श्रयन्तामृतावृधो द्वारो देवीरसश्चतः। अद्या नूनं च यष्टवे ॥६॥**

यज्ञ गर्नका लागि निश्चित रूपले यज्ञको परिवेश बढाउने खालका अविनाशी दिव्य द्वारहरू आज खुलून्।

**नक्तोषासा सुपेशसास्मिन् यज्ञ उप ह्वये। इदं नो बर्हिरासदे ॥७॥**

सुन्दर रूप भएका रात्रि र उषालाई हामी यस यज्ञमा आह्वान गर्दछौं। हाम्रा तर्फबाट आसनका रूपमा यो कुश ओछ्याइएको छ।

**ता सुजिह्वा उप ह्वये होतारा दैव्या कवी। यज्ञं नो यक्षतामिमम् ॥८॥**

उत्तम वचन बोल्ने र मेधावी दुई अग्निलाई दिव्य होताको यज्ञमा यजनका निम्ति हामी बोलाउँछौं।

**इडा सरस्वती मही तिस्रो देवीर्मयोभुवः। बर्हिः सीदन्त्वस्रिधः ॥९॥**

इडा, सरस्वती र मही यी तीनै देवीहरू सुखदायी र कहिल्यै नसकिने खालका छन्। यी तीन दवीहरू नै हामीले ओछ्याएका कुशका आसनमा विराजमान होऊन्।

**इह त्वष्टारमग्रियं विश्वरूपमुप ह्वये। अस्माकमस्तु केवलः ॥१०॥**

सर्वभन्दा पहिल पुजिने, विविध रूप भएका त्वष्टादेवलाई यस यज्ञमा हामी आह्वान गर्दछौं। ती देवताहरू केवल हाम्रै होऊन्।

**अव सृजा वनस्पते देव देवेभ्यो हविः। प्र दातुरस्तु चेतनम्। ।११ ॥**

हे वनस्पतिदेव ! देवताहरूका लागि नित्य हविष्यान्न अर्पण गर्ने दाताहरूलाई तिमी प्राणस्वरूप उत्साह प्रदान गर।

**स्वाहा यज्ञं कृणोतनेन्द्राय यज्वनो गृहे। तत्र देवाँ उप ह्वये ॥१२॥**

हे यज्ञको कर्म सम्पादन गर्ने अध्वर्यु ! तिमी यजमानका घरमा इन्द्रदेवलाई सन्तुष्ट गर्नका लागि आहुति समर्पित गर। हामी होताहरू देवताहरूलाई आमन्त्रित गर्दछौं।

[सूक्त - १४]

ऋषि - मेधातिथि काण्व। देवता - विश्वेदेवा। छन्द - गायत्री।

**ऐभिरग्ने दुवो गिरो विश्वेभिः सोमपीतये। देवेभिर्याहि यक्षि च ॥१॥**

हे अग्निदेव ! सबै देवताहरूसित यस यज्ञमा सोमपान गर्नका लागि आऊ। हाम्रो सेवा र स्तुति ग्रहण गर्दै तिमी यज्ञका कर्महरू सम्पन्न गराऊ।

**आ त्वा कण्वा अहूषत गृणन्ति विप्र ते धियः। देवेभिरग्न आ गहि ॥२॥**

हे मेधावी अग्निदेव ! कण्व ऋषि तिमीलाई बोलाउँदै छन्। उनले तिम्रा कामको प्रशंसा गरेका छन्। त्यसैले तिमी देवताहरूसित यहाँ आऊ।

**इन्द्रवायू बृहस्पतिं मित्राग्निं पूषणं भगम्। आदित्यान् मारुतं गणम् ॥३॥**

यज्ञशालामा हामी इन्द्र, वायु, बृहस्पति, मित्र, अग्नि, पूषा, भग आदित्यगण र मरुत्गण आदि देवतालाई आह्वान गर्छौं।

**प्र वो भ्रियन्त इन्दवो मत्सरा मादयिष्णवः। द्रप्सा मध्वश्चमूषदः ॥४॥**

पिँधेर तयार गरिएको आनन्द र हर्ष बढाउने मधुर सोमरस अग्निदेवका लागि चमस आदि पात्रमा भरिएको छ।

**ईळते त्वामवस्यवः कण्वासो वृक्तबर्हिषः। हविष्मन्तो अरङ्कृतः ॥५॥**

कण्व ऋषिका सन्तान आफ्नो सुरक्षाको कामना गर्दछन्। उनीहरूले कुशको आसन ओछ्याएका छन्। उनीहरू हविष्यान्न र अलङ्कार लिएर अग्निदेवलाई स्तुति गर्दछन्।

**घृतपृष्ठा मनोयुजो ये त्वा वहन्ति वह्नयः। आ देवान्त्सोमपीतये ॥६॥**

अति दीप्तिमान् पिठ्युँ भएका, मनले चिताउना साथ रथमा नारिने घोडाले तानेका रथमा चढी तिमी सोमपान गर्नका लागि देवताहरूलाई लिएर अग्निदेव आऊन्।

**तान् यजत्राँ ऋतावृधोऽग्ने पत्नीवतस्कृधि। मध्वः सुजिह्व पायय ॥७॥**

हे अग्निदेव ! यज्ञको समृद्धि र शोभा बढाउने पूजनीय इन्द्रदेवलाई पत्नीसहित यस यज्ञमा बोलाऊ र उनीहरूलाई मधुर सोमरस पान गराऊ।

**ये यजत्रा य ईड्यास्ते ते पिबन्तु जिह्वया। मधोरग्ने वषट्कृति ॥८॥**

हे अग्निदेव ! यजन र स्तुति गरिने योग्य देवताहरूले तिम्रै जिह्वाबाट आनन्दपूर्वक सोमरस पान गरून्।

**आकीं सूर्यस्य रोचनाद्विश्वान् देवाँ उषर्बुधः। विप्रो होतेह वक्षति ॥९॥**

हे मेधावी होतारूप अग्निदेव ! तिमी प्रातः कालमै जाग्ने विश्वदेवहरूलाई सूर्य रश्मिसँगै हामीकहाँ ल्याउँछौ।

**विश्वेभिः सोम्यं मध्वग्न इन्द्रेण वायुना। पिबा मित्रस्य धामभिः ॥१०॥**

हे अग्निदेव ! इन्द्र, वायु, मित्र आदि देवताहरूका सम्पूर्ण तेजसँगै बसेर तिमी मधुर सोमरस पान गर।

**त्वं होता मनुर्हितोऽग्ने यज्ञेषु सीदसि। सेमं नो अध्वरं यज ॥११॥**

हे मनुष्यका हितैषि अग्निदेव ! तिमी होताका रूपमा यज्ञमा प्रतिष्ठित होऊ र हाम्रो यो हिंसारहित यज्ञ सम्पन्न गराऊ।

**युक्ष्वा ह्यरुषी रथे हरितो देव रोहितः। ताभिर्देवाँ इहा वह ॥१२॥**

हे अग्निदेव ! रातो रङ्गका, तेज गतिमा रथ तानेर हिँड्न सक्ने घोडाहरूलाई रथमा नारेर तिनीहरूकै सहयोगबाट देवताहरूलाई यस यज्ञमा बोलाऊ।

[सूक्त - १५]

ऋषि - मेधातिथि काण्व। देवता - इन्द्र मरुद्गण अश्विनीकुमार। छन्द - गायत्री]

**इन्द्र सोमं पिब ऋतुना त्वा विशन्त्विन्दवः। मत्सरासस्तदोकसः ॥१॥**

हे इन्द्रदेव ! ऋतुअनुसार सोमरस पान गर, यी जुनसुकै ऋतुका सोमरस तिम्रा शरीरमा उपयुक्त होऊन्। यो सोमरस तिम्रै सन्तुष्टिका लागि तयार भएको हो।

**मरुतः पिबत ऋतुना पोत्राद् यज्ञं पुनीतन। यूयं हि ष्ठा सुदानवः ॥२॥**

हे सर्वश्रेष्ठ दानी मरुत्‌हरू हो ! यी ऋत्विक्‌हरूलाई पोता भनिन्छ। यिनले पात्रहरूमा ऋतुसुहाउँदो सोमरस तयार गर्दछन्। तिमीहरू त्यो पान गरेर यज्ञ पवित्र गराओ।

**अभि यज्ञं गृणीहि नो ग्नावो नेष्टः पिब ऋतुना। त्वं हि रत्नधा असि ॥३॥**

हे त्वष्टादेव ! पत्नीका साथ रहेर यस यज्ञको प्रशंसा गर। यज्ञमा बसेर ऋतुसुहाउँदो सोमरस पान गर। तिमी निश्चय नै रत्नहरू प्रदान गर्दछौ।

**अग्ने देवाँ इहा वह सादया योनिषु त्रिषु। परि भूष पिब ऋतुना ॥४॥**

हे अग्निदेव ! तिमी देवताहरूलाई यहाँ बोलाऊ। उनीहरूलाई यज्ञका तीनै कालका सवनमा राख। उनीहरूलाई रुच्दो किसिमले ऋतुअनुसारको सोम पान गराऊ।

**ब्राह्मणादिन्द्र राधसः पिबा सोममृतूँरनु। तवेद्धि सख्यमस्तृतम् ॥५॥**

हे इन्द्रदेव ! तिमी ब्रह्मज्ञान भएका साधकका पात्रबाट सोमरस पान गर, किनकि ती साधकसित तिम्रो अटुट मित्रता रहेको छ।

**युवं दक्षं धृतव्रत मित्रावरुण दूळभम्। ऋतुना यज्ञमाशाथे ॥६॥**

हे अटल व्रत धारण गर्ने मित्रावरुण ! तिमीहरू दुवै जना ऋतुअनुसारको बल प्रदान गर्न सक्छौ। अत्यन्त परिश्रमपूर्वक गरिने यो यज्ञ सम्पन्न गर्न तिमीहरू नै सक्षम छौ।

**द्रविणोदा द्रविणसो ग्रावहस्तासो अध्वरे। यज्ञेषु देवमीळते ॥७॥**

धनको कामना गर्ने याजकहरू सोमरस तयार पार्नका लागि हातमा ढुङ्गा लिन्छन्। त्यसपछि उनीहरू पवित्र यज्ञका लागि धन प्रदान गर्ने अग्निदेवलाई स्तुति गर्दछन्।

**द्रविणोदा ददातु नो वसूनि यानि शृण्विरे। देवेषु ता वनामहे ॥८॥**

हे धन प्रदान गर्न सक्ने अग्निदेव ! जुन धनका विषयमा हामीले सुनेका छौं, ती सबै खालका धन हामीलाई प्रदान गर। त्यो धन हामी देवताहरूलाई नै अर्पित गर्नेछौं।

**द्रविणोदाः पिपीषति जुहोत प्र च तिष्ठत। नेष्ट्रादृतुभिरिष्यत ॥९॥**

धन प्रदान गर्ने अग्निदेवले नेष्टा नामका पात्रबाट ऋतुअनुसारको सोमरस पिउने इच्छा गरेका छन्। त्यसैले हे याजकहरू ! तिमीहरू त्यहाँ गएर यज्ञ गर र फेरि आफ्ना निवास स्थानतर्फ प्रस्थान गर।

**यत् त्वा तुरीयमृतुभिर्द्रविणोदो यजामहे। अध स्मा नो ददिर्भव ॥१०॥**

हे धनदाता अग्निदेव ! तिमी ऋतुहरूको ज्ञान भएका हुनाले तिम्रा लागि हामी चौथो अंश सोम अर्पित गरिरहेका छौं। हाम्रा लागि तिमी धन प्रदान गर्ने भइदेऊ।

**अश्विना पिबतं मधु दीद्यग्नी शुचिव्रता। ऋतुना यज्ञवाहसा ॥११॥**

प्रकाशले युक्त, शुद्ध कर्म गर्न योग्य, ऋतुअनुसार यज्ञको पूरा गर्ने हे अश्विनीकुमारहरू हो ! तिमीहरू यो मधुर सोमरस पान गर।

**गार्हपत्येन सन्त्य ऋतुना यज्ञनीरसि। देवान् देवयते यज ॥१२॥**

खोजेको कुरो प्रदान गर्ने अग्निदेव ! गार्हपत्य नियमअनुसार तिमी ऋतुहरूका विषयमा जानकार छौ। यज्ञ पूरा गर्न वा गराउन सक्छौ। देवत्व प्राप्त गर्न चाहने याजकहरूका लागि यज्ञ गराइदेऊ।

## [सूक्त - १६]

**ऋषि** - मेधातिथि काण्व। **देवता** - इन्द्र। **छन्द** - गायत्री।

**आ त्वा वहन्तु हरयो वृषणं सोमपीतये। इन्द्र त्वा सूरचक्षसः ॥१॥**

हे बलसम्पन्न इन्द्रदेव ! सोमरस पिउने सुविधाका लागि नै तिमीलाई तेजस्वी घोडाले यज्ञस्थलमा लिएर आएका हुन्। सूर्यजत्तिकै प्रकाशयुक्त ऋत्विक्‌ले मन्त्रद्वारा तिम्रो स्तुति गरुन्।

**इमा धाना घृतस्नुवो हरी इहोप वक्षतः। इन्द्रं सुखतमे रथे ॥२॥**

अत्यन्त सुखदायी रथमा नारिएका दुई वटा घोडाले इन्द्रदेवलाई धाना ग्रहण गर्नका लागि यहाँ लिएर आएका हुन्। धाना भनेको घिउमा तारेको जौको परिकार हो। यज्ञको हविका रूपमा इन्द्रदेवले त्यसलाई ग्रहण गर्दछन्।

**इन्द्रं प्रातर्हवामह इन्द्रं प्रयत्यध्वरे। इन्द्रं सोमस्य पीतये ॥३॥**

हामीहरू प्रातः यज्ञ आरम्भ गर्ने बेलामा, मध्याह्न सोमयाग प्रारम्भ भएपछि र सायं यज्ञको समाप्तिपछि पनि सोमरस पिउनका लागि इन्द्रदेवलाई आह्वान गर्दछौं।

उप नः सुतमा गहि हरिभिरिन्द्र केशिभिः । सुते हि त्वा हवामहे ॥४॥

हे इन्द्रदेव ! लामो जगर भएका आफ्ना घोडाहरूलाई तिमी सोमरस तयार हुँदै गरेका ठाउँमा लिएर जाऊ। सोमरस तयार भएपछि हामी तिम्रो स्वागत गर्नेछौँ।

सेमं नः स्तोममा गह्युपेदं सवनं सुतम्। गौरो न तृषितः पिब ॥५॥

हे इन्द्रदेव ! हाम्रो स्तोत्र सुनेर तिमी यहाँ आयौ। तिर्खाएका मृग जलाशयमा पुग्न हतारिएझैं सोमरसको तयारी गर्ने ठाउँमा नजिकै आऊ। तिमी सोमरस पान गर।

इमे सोमास इन्दवः सुतासो अधि बर्हिषि। ताँ इन्द्र सहसे पिब ॥६॥

हे इन्द्रदेव ! प्रभावशाली सोमरस तयार भएकाले कुशका आसनमा सजाइएको छ। आफ्नो शक्ति बढाउनका लागि तिमी यसलाई पान गर।

अयं ते स्तोमो अग्रियो हृदिस्पृगस्तु शंतमः। अथा सोमं सुतं पिब ॥७॥

हे इन्द्रदेव ! यो स्तोत्र श्रेष्ठ, मर्मस्पर्शी र अत्यन्त सुखद छ। यो स्तोत्र सुनिसकेपछि पेलेर तयार पारेको सोमरस तिमी पान गर।

विश्वमित्सवनं सुतमिन्द्रो मदाय गच्छति। वृत्रहा सोमपीतये ॥८॥

सोमरस तयार पार्ने गरेका सबै ठाउँमा इन्द्रदेव अवश्य जान्छन्। दुष्टहरूको विनाश गर्ने ती इन्द्रदेव सोमरस पिएर आफ्नो खुसी बढाउँछन्।

सेमं नः काममा पृण गोभिरश्वैः शतक्रतो। स्तवाम त्वा स्वाध्यः ॥९॥

हे सयौँ असल काम गर्ने इन्द्रदेव ! तिमी हाम्रा गाई र घोडासित सम्बन्धित कामना पूर्ण गरिदेऊ। हामी मन लगाएर तिम्रो स्तुति गर्दछौँ।

[सूक्त - १७]

ऋषि - मेधातिथि काण्व। देवता - इन्द्रावरुण। छन्द - गायत्री।

इन्द्रावरुणयोरहं सम्राजोरव आ वृणे। ता नो मृडात ईदृशे ॥१॥

हामी इन्द्र र वरुण दुवै प्रतापी देवताहरूबाट आफ्नो सुरक्षाको कामना गर्दछौँ। उनीहरू दुवैले सुख प्राप्त हुने गरी हामीमाथि कृपा गर्नेछन्।

गन्तारा हि स्थोऽवसे हवं विप्रस्य मावतः। धर्तारा चर्षणीनाम् ॥२॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू दुवै मनुष्यका सम्राट्, धारक र पोषक हौ। हामीजस्ता ब्राह्मणले आह्वान गर्दा सुरक्षाका लागि तयार भएर तिमीहरू अवश्य आउनेछौ।

अनुकामं तर्पयेथामिन्द्रावरुण राय आ। ता वां नेदिष्ठमीमहे ॥३॥

हे इन्द्र र वरुणदेव ! इच्छाअनुसारको धन दिएर हामीलाई सन्तुष्ट गर भन्दै तिमीहरू दुवैलाई हामी प्रार्थना गर्दछौँ।

युवाकु हि शचीनां युवाकु सुमतीनाम्। भूयाम वाजदाव्नाम् ॥४॥

सङ्गठित कर्म र सङ्गठित सद्बुद्धिका भएर हामी दान गर्नमा सर्वश्रेष्ठ बनौँ।

इन्द्रः सहस्रदाव्नां वरुणः शंस्यानाम्। क्रतुर्भवत्युक्थ्यः ॥५॥

तिमीहरू दुईमध्ये इन्द्रदेव सहस्र दाताहरूमा सर्वश्रेष्ठ र वरुणदेव सहस्र देवताहरूमा सर्वश्रेष्ठ हुनाले आआफ्ना क्षेत्रमा दुवै प्रशंसनीय छौ।

तयोरिदवसा वयं सनेम नि च धीमहि। स्यादुत प्ररेचनम् ॥६॥

तिमीहरूले सुरक्षा गरेको धन पाएपछि हामी त्यसको सदुपयोग गरौँ। त्यस्तो धन मनग्गे मात्रामा हामीलाई प्राप्त होस्।

इन्द्रावरुण वामहं हुवे चित्राय राधसे। अस्मान्त्सु जिग्युषस्कृतम् ॥७॥

हे इन्द्र र वरुणदेव ! विभिन्न खालको धनका कामनाले हामी तिमीहरूलाई आह्वान गर्दछौँ। तिमीहरू हामीलाई सर्वश्रेष्ठ र विजयी गराओ।

इन्द्रावरुण नू नु वां सिषासन्तीषु धीष्वा। अस्मभ्यं शर्म यच्छतम् ॥८॥

हे इन्द्र र वरुणदेव ! हाम्रा बुद्धिले तिमीहरूको उचित सेवा गर्न रुचाएको छ। त्यसो हुनाले हामीलाई चाँडै निश्चित रूपमा सुख प्रदान गर।

**प्र वामश्नोतु सुष्टुतिरिन्द्रावरुण यां हुवे। यामृधाथे सधस्तुतिम् ॥९॥**
हे इन्द्र र वरुणदेव ! जुन उत्तम स्तुति गर्नका लागि तिमीहरू दुईलाई हामी आह्वान गर्दै छौँ र जुन स्तुति पाएपछि पुष्ट हुन्छौ, त्यस्तो स्तुति तिमीहरूलाई प्राप्त होस्।

## [सूक्त – १८]

**ऋषि** – मेधातिथि काण्व। **देवता** – ब्रह्मणस्पति इन्द्र सोम दक्षिणा। **छन्द** – गायत्री।

**सोमानं स्वरणं कृणुहि ब्रह्मणस्पते। कक्षीवन्तं य औशिजः ॥१॥**
हे सम्पूर्ण ज्ञानका अधिपति ब्रह्मणस्पतिदेव ! सोमरस सेवन गराउने यजमानलाई तिमी उशिज्‌का पुत्र औशज अर्थात् कक्षीवान्‌को जस्तै उत्तम प्रकाशले सम्पन्न गराइदेऊ।

**यो रेवान् यो अमीवहा वसुवित् पुष्टिवर्धनः। स नः सिषक्तु यस्तुरः ॥२॥**
ब्रह्मणस्पतिदेव ऐश्वर्यशाली, रोगनाशक, धनदाता, पुष्टिवर्धक र शीघ्र फलदायक छन्। तिनले हामीमाथि कृपा राखून्।

**मा नः शंसो अररुषो धूर्तिः प्रणङ् मर्त्यस्य। रक्षा णो ब्रह्मणस्पते ॥३॥**
हे ब्रह्मणस्पतिदेव ! यज्ञ गर्नुको सट्टा अनिष्ट होस् भन्ने विचार भएका दुष्ट शत्रुहरू संहार गर। हामीमाथि दुष्टको प्रभाव नपरोस्। तिमी हाम्रो रक्षा गर।

**स घा वीरो न रिष्यति यमिन्द्रो ब्रह्मणस्पतिः। सोमो हिनोति मर्त्यम् ॥४॥**
जुन मानिसलाई इन्द्रदेव, ब्रह्मणस्पतिदेव र सोमदेवले प्रेरित गर्दछन्, धर्तीमा भएका ती वीरहरू कहिल्यै नष्ट हुँदैनन्।

**त्वं तं ब्रह्मणस्पते सोम इन्द्रश्च मर्त्यम्। दक्षिणा पात्वंहसः ॥५॥**
हे ब्रह्मणस्पतिदेव ! तिमी सोमदेव, इन्द्रदेव र दक्षिणादेवीका साथमा रहिदेऊ। यज्ञको अनुष्ठान गर्ने मानिसहरूलाई पापबाट रक्षा गर।

**सदसस्पतिमद्भुतं प्रियमिन्द्रस्य काम्यम्। सनिं मेधामयासिषम् ॥६॥**
इन्द्रदेवका प्रिय मित्र हुनाले खोजेको कुरो दिन सक्ने, सबैको मर्म बुझ्ने र असल व्यवहारका स्वामी सदसस्पतिदेवबाट हामी अद्‌भुत ज्ञानबुद्धि प्राप्त गर्न चाहन्छौँ।

**यस्मादृते न सिध्यति यज्ञो विपश्चितश्चन। स धीनां योगमिन्वति ॥७॥**
जसको कृपाका अभावमा ज्ञानीले पनि यज्ञ पूरा गर्न सक्दैन, तिनै सदसस्पतिदेवले हाम्रा बुद्धिलाई उत्तम प्रेरणाद्वारा समृद्ध गराऊन्।

**आदृध्नोति हविष्कृतिं प्राञ्चं कृणोत्यध्वरम्। होत्रा देवेषु गच्छति ॥८॥**
तिनै सदसस्पतिदेवले हविष्यान्न तयार गर्ने साधकहरूको र यज्ञको सुरक्षा गर्दछन्। उनी हाम्रो स्तुति देवताहरूसमक्ष पुऱ्याउँछन्।

**नराशंसं सुधृष्टममपश्यं सप्रथस्तमम्। दिवो न सद्ममखसम्। ९ ॥**
द्युलोकजस्तै अत्यन्त तेजस्वी, दीप्तिमान्, यशस्वी र मनुष्यहरूद्वारा सधैँ प्रशंसा पाउने सदसस्पतिदेवलाई हामी पनि खोज्दछौँ।

## [सूक्त – १९]

**ऋषि** – मेधातिथि काण्व। **देवता** – अग्नि मरुद्‌गण। **छन्द** – गायत्री।

**प्रति त्यं चारुमध्वरं गोपीथाय प्र हूयसे। मरुद्भिरग्न आ गहि ॥१॥**
हे अग्निदेव ! श्रेष्ठ यज्ञको गरिमा संरक्षण गर्नका लागि मरुत्‌हरूसँगै तिमीलाई आह्वान गर्दछौँ। देवताहरूका लागि गरिएका यस यज्ञमा तिमी आऊ।

**नहि देवो न मर्त्यो महस्तव क्रतुं परः। मरुद्भिरग्न आ गहि ॥२॥**
हे अग्निदेव ! तिमीले सम्पन्न गर्ने काम न त कुनै अन्य देवताले गर्न सक्छन्, न कुनै मानिसले नै। यस्ता शक्तिशाली तिमी मरुद्‌गणसित यस यज्ञमा आइदेऊ।

**ये महो रजसो विदुर्विश्वे देवासो अद्रुहः। मरुद्भिरग्न आ गहि ॥३॥**
मरुत्‌गणले पृथ्वीमा अमृतसरिको जल वर्षा गराउँछन्। हे अग्निदेव ! उनै द्रोहरहित मरुत्‌हरूका साथ तिमी यस यज्ञमा आइदेऊ।

य उग्रा अर्कमानृचुरनाधृष्टास ओजसा। मरुद्भिरग्न आ गहि ॥४॥
हे अत्यन्त बलशाली, अजेय र प्रचण्ड सूर्यको तेजजस्तै भएर प्रकाशित एवं प्रकाशन गर्ने अग्निदेव ! मरुत्‌गणका साथ तिमी यस यज्ञमा आइदेऊ।

ये शुभ्रा घोरवर्पसः सुक्षत्रासो रिशादसः। मरुद्भिरग्न आ गहि ॥५॥
हे अत्यन्त स्वच्छ तेजयुक्त अग्निदेव ! तिम्रो रूप धारिलो र तिखो छ। तिमी अत्यन्त बलसम्पन्न हुनाले शत्रु संहार गर्न सक्षम छौ। हे अग्निदेव ! मरुत्‌गणसँगै यज्ञमा आऊ।

ये नाकस्याधि रोचने दिवि देवास आसते। मरुद्भिरग्न आ गहि ॥६॥
हे सम्पूर्ण मरुत्‌गणभन्दा माथि रहेका, संसारका प्रकाशक र द्युलोकमा निवास गर्ने अग्निदेव ! तिमी मरुत्‌गणका साथ यस यज्ञमा आइदेऊ।

य ईङ्खयन्ति पर्वतान् तिरः समुद्रमर्णवम्। मरुद्भिरग्न आ गहि ॥७॥
हे अग्निदेव ! मरुत्‌गणले पर्वतजस्ता विशाल बादललाई एक ठाउँबाट टाढाको अर्कै ठाउँमा पुऱ्याउँछन् र शान्त समुद्रमा पनि विशाल छाल उत्पन्न गराउँछन्। तिमी तिनै मरुत्‌गणका साथ यस यज्ञमा आइदेऊ।

आ ये तन्वन्ति रश्मिभिस्तिरः समुद्रमोजसा। मरुद्भिरग्न आ गहि ॥८॥
हे अग्निदेव ! मरुत्‌गण सूर्यका किरणभित्र पस्दछन् र समुद्रलाई आफ्ना तेजले प्रभावित गराउँछन्। तिमी तिनै मरुत्‌गणका साथ यस यज्ञमा आइदेऊ।

अभि त्वा पूर्वपीतये सृजामि सोम्यं मधु। मरुद्भिरग्न आ गहि ॥९॥
हे अग्निदेव ! यो मधुर सोमरस सबैभन्दा पहिले सेवन गर्नका लागि तिमीलाई हामी अर्पण गर्दछौं। त्यसो हुनाले मरुत्‌गणका साथ यस यज्ञमा आइदेऊ।

[सूक्त - २०]
ऋषि - मेधातिथि काण्व। देवता - ऋभुगण। छन्द - गायत्री।

अयं देवाय जन्मने स्तोमो विप्रेभिरासया। अकारि रत्नधातमः ॥१॥
ऋभुदेवहरूलाई खुसी पार्नका लागि ज्ञानीहरूले रमणीय स्तोत्रको रचना गरे। त्यसो भइसकेपछि उनीहरूले त्यही स्तोत्र पाठ गरे।

य इन्द्राय वचोयुजा ततक्षुर्मनसा हरी। शमीभिर्यज्ञमाशत ॥२॥
ऋभुदेवहरूले आफ्नो कौशलद्वारा इन्द्रदेवका लागि मुखको सङ्केतमा चल्ने घोडा सृष्टि गरे। तिनै ऋभुदेवहरू शमी आदिका साथ यज्ञमा विराजमान हुनेछन्।

तक्षन्नासत्याभ्यां परिज्मानं सुखं रथम्। तक्षन्धेनुं सबर्दुघाम् ॥३॥
ऋभुदेवले अश्विनीकुमारका लागि सुविस्तासाथ चल्ने रथ बनाइदिए। त्यसपछि गाईलाई मिठो र पवित्र दुध दिनलायक बनाए।

युवाना पितरा पुनः सत्यमन्त्रा ऋजूयवः। ऋभवो विष्ट्यक्रत ॥४॥
अचुक मन्त्रको शक्ति भएकाले सर्वत्र व्यापक रहेका ऋभुदेवहरूले मातापितामा स्नेह भाव सञ्चारित गराए। त्यसपछि सधैं जवानहरूलाई नै मातापिता बनाए।

सं वो मदासो अग्मतेन्द्रेण च मरुत्वता। आदित्येभिश्च राजभिः ॥५॥
हे ऋभुदेव ! यो हर्षदायक सोमरस इन्द्रदेव, मरुत्‌गण र दीप्तिमान आदित्यहरूका साथ तिमीलाई पनि अर्पित गरिएको छ।

उत त्यं चमसं नवं त्वष्टुर्देवस्य निष्कृतम्। अकर्त चतुरः पुनः ॥६॥
त्वष्टादेवले चमस नामको एउटा पात्र बनाएका थिए। त्यो चमस उनले सोमरसका लागि तयार गरेका हुन्। ऋभुहरूले त्यसैलाई चार किसिमको बनाएर प्रयोग गरे।

ते नो रत्नानि धत्तन त्रिरा साप्तानि सुन्वते। एकमेकं सुशस्तिभिः ॥७॥
उत्तम स्तुतिले प्रशंसा गरिने हे ऋभुदेवहरू ! सोमयाग गर्ने प्रत्येक याजकलाई तीनै खालका सप्तरत्न अर्थात् एक्काईस किसिमका यज्ञकर्म प्रदान गर।

अधारयन्त वह्नयोऽभजन्त सुकृत्यया। भागं देवेषु यज्ञियम् ॥८॥
तेजस्वी ऋभुदेवहरू आफ्ना उत्तम कर्मले गर्दा देवताको स्थानमा पुगे। त्यसपछि उनीहरूले यज्ञको भाग सेवन गरे।

[सूक्त - २१]

ऋषि - मेधातिथि काण्व। देवता - इन्द्राग्नी। छन्द - गायत्री।

**इहेन्द्राग्नी उप ह्वये तयोरित्स्तोममुश्मसि। ता सोमं सोमपातमा ॥१॥**

यस यज्ञस्थलमा हामी इन्द्र र अग्निदेवलाई आह्वान गर्दछौं। सोमपान गर्न रुचाउने ती देवताहरूलाई स्तुति गर्दै सोमरस पान गर्नका लागि निवेदन गर्दछौं।

**ता यज्ञेषु प्र शंसतेन्द्राग्नी शुम्भता नरः। ता गायत्रेषु गायत ॥२॥**

हे ऋत्विक् हो ! तिमीहरू अनुष्ठान गर्दै इन्द्र तथा अग्निदेव र उनीहरूका शस्त्रलाई स्तुति गर। विभिन्न अलङ्कारले उनीहरूलाई विभूषित गर र गायत्री छन्दका सामगान गर्दै उनीहरूलाई प्रसन्न गराओ।

**ता मित्रस्य प्रशस्तय इन्द्राग्नी ता हवामहे। सोमपा सोमपीतये ॥३॥**

सोमपान गर्न रुचाउने, मित्रता र प्रशंसा गर्नयोग्य उनै इन्द्र र अग्निदेवलाई हामी सोमरस पान गर्नका लागि बोलाउँछौं।

**उग्रा सन्ता हवामह उपेदं सवनं सुतम्। इन्द्राग्नी एह गच्छताम् ॥४॥**

अति उग्र देवगणले इन्द्र एवं अग्निदेवलाई सोमरस बनाइएको यज्ञस्थलमा बोलाउँछन्, उनीहरू त्यहाँ आइदिऊन्।

**ता महान्ता सदस्पती इन्द्राग्नी रक्ष उब्जतम्। अप्रजाः सन्त्वत्रिणः ॥५॥**

देवताहरूमा महान् इन्द्र र अग्निदेव सत्पुरुषका रक्षक तथा स्वामी हुन्। तिनीहरूले राक्षसहरूलाई वशमा गरुन् र सरल स्वभावयुक्त बनाऊन्। मानिसलाई खाने राक्षसहरूलाई तिनले आफन्तबाट एक्ल्याएर बलहीन पारिदिऊन्।

**तेन सत्येन जागृमतमधि प्रचेतुने पदे। इन्द्राग्नी शर्म यच्छतम् ॥६॥**

हे इन्द्र र अग्नि ! सत्य एवं चैतन्य रूप यज्ञस्थलमा तिमीहरू संरक्षकजस्तै होओ, जागृत रहिदेओ र हामीलाई सुख प्रदान गर।

[सूक्त - २२]

ऋषि - मेधातिथि काण्व। देवता - अश्विनीकुमार द्यावापृथिवी। छन्द - गायत्री।

**प्रातर्युजा वि बोधयाश्विनावेह गच्छताम्। अस्य सोमस्य पीतये ॥१॥**

हे अध्वर्युहरू ! प्रातःकाल सचेत हुने अश्विनीकुमारहरूलाई जगाओ। उनीहरू हाम्रा यस यज्ञमा सोमपान गर्नका लागि आऊन्।

**या सुरथा रथीतमोभा देवा दिविस्पृशा। अश्विना ता हवामहे ॥२॥**

दुवै अश्विनीकुमारहरू सुसज्जित रथले युक्त महारथी हुन्। यिनीहरू आकाशयात्रा गर्दछन्। हामी यी दुवैलाई आह्वान गर्दछौं।

**या वां कशा मधुमत्यश्विना सूनृतावती। तया यज्ञं मिमिक्षतम् ॥३॥**

हे अश्विनीकुमारहरू ! तिमीहरूको वाणी मधुर र सत्यवचनयुक्त छ। त्यसबाट यज्ञको सेचन गर्ने कृपा गर।

**नहि वामस्ति दूरके यत्रा रथेन गच्छथः। अश्विना सोमिनो गृहम् ॥४॥**

हे अश्विनीकुमारहरू ! तिमीहरू रथमा चढेर जुन बाटोबाट आउँछौ, त्यहाँबाट सोमयाग गर्ने याजकहरूको घर टाढा छैन।

**हिरण्यपाणिमूतये सवितारमुप ह्वये। स चेत्ता देवता पदम् ॥५॥**

यजमानलाई हिरण्यगर्भ प्रदान गर्ने सवितादेवलाई हामी रक्षा प्राप्त गर्नका निम्ति आह्वान गर्दछौं। उनैले यजमानहरू भएका स्थानमा पुग्ने बाटो देखाउनेछन्।

**अपां नपातमवसे सवितारमुप स्तुहि। तस्य व्रतान्युश्मसि ॥६॥**

हे ऋत्विक् ! हाम्रो रक्षाका लागि तिमी सवितादेवलाई स्तुति गर। हामी सवितादेवका लागि सोमयाग आदि कर्म सम्पन्न गर्न चाहन्छौं। ती सवितादेवले जल सुकाउँछन् र फेरि सहस्र गुणा बर्साउँछन्।

**विभक्तारं हवामहे वसोश्चित्रस्य राधसः । सवितारं नृचक्षसम् ॥७॥**
समस्त प्राणीहरूका आश्रयभूत, विविध धन प्रदान गर्ने, समस्त मानवका प्रकाशक सूर्यदेवलाई हामी आह्वान गर्दछौँ।

**सखाय आ नि षीदत सविता स्तोम्यो नु नः । दाता राधांसि शुम्भति ॥८॥**
हे मित्रहरू ! हामी सबै भेला भएर सवितादेवलाई स्तुति गरौँ। धनऐश्वर्यदाता सूर्यदेव अत्यन्त शोभायमान छन्।

**अग्ने पत्नीरिहा वह देवानामुशतीरुप । त्वष्टारं सोमपीतये ॥९॥**
हे अग्निदेव ! आउन रहर गर्ने देवपत्नीहरूलाई यहाँ लिएर आऊ र त्वष्टादेवलाई पनि सोमपानका लागि बोलाऊ।

**आ ग्ना अग्न इहावसे होत्रां यविष्ठ भारतीम् । वरूत्रीं धिषणां वह ॥१०॥**
हे अग्निदेव देवपत्नीहरूलाई हाम्रो सुरक्षाका लागि यहाँ लिएर आऊ। तिमी हाम्रो रक्षाका लागि अग्निकी पत्नी होत्रा, आदित्यकी पत्नी भारती, वरणीय वाग्देवी धिषणा आदि देवीहरूलाई पनि यहाँ लिएर आऊ।

**अभि नो देवीरवसा महः शर्मणा नृपत्नीः । अच्छिन्नपत्राः सचन्ताम् ॥११॥**
अवरोधविनाको बाटोमा हिँड्ने देवपत्नीहरू मनुष्यलाई ऐश्वर्य प्रदान गर्न सक्षम छन्। उनीहरू महान् सुख र रक्षणको सामर्थ्य भएका हुनाले हामीसित रहिदिऊन्।

**इहेन्द्राणीमुप ह्वये वरुणानीं स्वस्तये । अग्नायीं सोमपीतये ॥१२॥**
आफ्नो कल्याण र सोमपानका लागि हामी इन्द्राणी, वरुणपत्नी र अग्निपत्नीलाई आह्वान गर्दछौँ।

**मही द्यौः पृथिवी च न इमं यज्ञं मिमिक्षताम् । पिपृतां नो भरीमभिः ॥१३॥**
अत्यन्त विस्तृत पृथ्वी र द्युलोकले हाम्रा यस यज्ञकर्मलाई आआफ्ना अंशबाट परिपूर्ण गरुन्। भरणपोषण गर्ने सामग्रीहरूद्वारा तिनीहरूले हामी सबैलाई तृप्त गराऊन्।

**तयोरिद्घृतवत्पयो विप्रा रिहन्ति धीतिभिः । गन्धर्वस्य ध्रुवे पदे ॥१४॥**
गन्धर्वलोकका ध्रुव स्थान आकाश र पृथ्वी हुन्। तिनका बीचमा घिउजस्तै स्वच्छ जल छ। त्यो पोषणयुक्त जलप्रवाह ज्ञानीहरूले आआफ्ना विवेकयुक्त कर्मले प्राप्त गरुन्।

**स्योना पृथिवि भवानृक्षरा निवेशनी । यच्छा नः शर्म सप्रथः ॥१५॥**
हे पृथ्वी देवी ! तिमी सुखदातृ हौ। बाधा हटाएर उत्तम आवास दिन तिमी सक्षम छौ। हामीलाई प्रशस्त परिमाणमा सुख प्रदान गर।

**अतो देवा अवन्तु नो यतो विष्णुर्विचक्रमे । पृथिव्याः सप्त धामभिः ॥१६॥**
जहाँबाट विष्णुले पराक्रम देखाए, उसै पृथ्वीका सात धामहरूबाट देवताहरूले हाम्रो रक्षा गरुन्।

**इदं विष्णुर्वि चक्रमे त्रेधा नि दधे पदम् । समूढमस्य पांसुरे ॥१७॥**
यस्तो सबै विष्णुदेवको पराक्रम हो, उनका तीन प्रकारका चरण छन्। यसको मर्म धुलो भरिएका ठाउँमा रहेको हुन्छ।

**त्रीणि पदा वि चक्रमे विष्णुर्गोपा अदाभ्यः । अतो धर्माणि धारयन् ॥१८॥**
विश्वरक्षक, अविनाशी विष्णुदेव तीनै लोकमा यज्ञ आदि कर्म पोषित गर्दछन्। उनी तीन पाइलाले जगत्मा व्याप्त रहन्छन्। अर्थात् उनी सृष्टि, स्थिति र रूपान्तरण यी तीन शक्तिले विश्व सञ्चालन गर्दछन्।

**विष्णोः कर्माणि पश्यत यतो व्रतानि पस्पशे । इन्द्रस्य युज्यः सखा ॥१९॥**
हे याजकहरू ! सर्वव्यापक भगवान् विष्णुका सृष्टि सञ्चालनमा सम्बन्धित कार्यहरू ध्यानपूर्वक हेर। यसमा अनेकौँ किसिमका व्रत वा नियमहरूको दर्शन गर्न सकिन्छ। इन्द्रका योग्य मित्रहरूले त्यस्ता परम सत्ताको अनुकूल बनेर रहनुपर्दछ।

**तद्विष्णोः परमं पदं सदा पश्यन्ति सूरयः । दिवीव चक्षुराततम् ॥२०॥**
जसरी सामान्य आँखाले आकाशमा रहेका सूर्यदेवलाई सहजतापूर्वक देख्न सकिन्छ उसै गरी विद्वान्हरूले आफ्ना ज्ञानचक्षुले विष्णुदेवका श्रेष्ठ स्थानलाई पनि देख्छन्।

**तद्विप्रासो विपन्यवो जागृवांसः समिन्धते। विष्णोर्यत्परमं पदम् ॥२१॥**
जागरुक विद्वान् स्तोताहरूले विष्णुदेवको त्यो परमपद प्रकट गराउँछन्।

[सूक्त - २३]

**ऋषि** - मेधातिथि काण्व। **देवता** - वायु मित्रावरुण। **छन्द**- गायत्री उष्णिक् अनुष्टुप्।

**तीव्राः सोमास आ गह्याशीर्वन्तः सुता इमे। वायो तान्प्रस्थितान्पिब ॥१॥**
हे वायुदेव! निचोरिएको सोमरस खरो भएकाले दुध मिसाएर तयार गरिएको हो। तिमी आइदेऊ र उत्तर वेदीनजिक ल्याइएको सोमरस पान गर।

**उभा देवा दिविस्पृशेन्द्रवायू हवामहे। अस्य सोमस्य पीतये ॥२॥**
जसको यश दिव्यलोकसम्म फैलिएको छ, तिनै इन्द्र र वायुदेवलाई हामी सोमरस पान गर्नका लागि आमन्त्रित गर्दछौं।

**इन्द्रवायू मनोजुवा विप्रा हवन्त ऊतये। सहस्राक्षा धियस्पती ॥३॥**
मनजत्तिकै वेगवान् र हज्जार आँखा भएका, बुद्धिका अधिपति इन्द्र र वायुदेवलाई ज्ञानीहरू आफ्नो सुरक्षाका लागि आह्वान गर्दछन्।

**मित्रं वयं हवामहे वरुणं सोमपीतये। जज्ञाना पूतदक्षसा ॥४॥**
सोमरस पान गर्न यज्ञस्थलमा प्रकट हुने परम पवित्र एवं बलशाली मित्र र वरुणदेव दुवैलाई हामी आह्वान गर्दछौं।

**ऋतेन यावृतावृधावृतस्य ज्योतिषस्पती। ता मित्रावरुणा हुवे ॥५॥**
सन्मार्ग अनुसरण गर्न उत्साहित गर्ने तेजस्वी मित्रावरुणलाई हामी आह्वान गर्दछौं।

**वरुणः प्राविता भुवन्मित्रो विश्वाभिरूतिभिः करतां नः सुराधसः ॥६॥**
वरुण एवं मित्र देवता आफ्ना सम्पूर्ण साधनले विविध प्रकारले हामी सबैको रक्षा गर्दछन्। उनीहरूले हामीलाई वैभवबाट सम्पन्न गराऊन्।

**मरुत्वन्तं हवामह इन्द्रमा सोमपीतये। सजूर्गणेन तृम्पतु ॥७॥**
मरुत्गणसँगै सोमरस पान गर्न भनेर इन्द्रदेवलाई बोलाइएको छ। मरुत्गणसित आउँदा उनी सन्तुष्ट होऊन्।

**इन्द्रज्येष्ठा मरुद्गणा देवासः पूषरातयः। विश्वे मम श्रुता हवम् ॥८॥**
पूषादेवजस्तै इन्द्रदेव दानीहरूमा श्रेष्ठ छन्। उनीहरू सबैले मरुत्गणका साथमा हाम्रो आह्वान सुनून्।

**हत वृत्रं सुदानव इन्द्रेण सहसा युजा। मा नो दुःशंस ईशत ॥९॥**
हे उत्तम दानी मरुत्हरू हो! आफ्ना बलवान् र उत्तम साथी इन्द्रदेवसित तिमीहरू दुष्टलाई सखाप गर। दुष्टताले हामीलाई जित्न नसकोस्।

**विश्वान्देवान्हवामहे मरुतः सोमपीतये। उग्रा हि पृश्निमातरः ॥१०॥**
सबै मरुत्हरूलाई हामी सोमरस पान गर्न बोलाउँछौं। उनीहरू सबै अनेक रङ्गले रङ्गीन पृथ्वीका पुत्र हुन्। तिनीहरू महान, वीर र पराक्रमी छन्।

**जयतामिव तन्यतुर्मरुतामेति धृष्णुया। यच्छुभं याथना नरः ॥११॥**
वेगले प्रवाहित हुने मरुत्हरूको शब्द विजयनादजस्तै गुञ्जायमान भएपछि त्यसबाट मानिसको मङ्गल हुन्छ।

**हस्काराद्विद्युतस्पर्यतो जाता अवन्तु नः। मरुतो मृडयन्तु नः ॥१२॥**
चम्किएको विद्युत्बाट उत्पन्न मरुत्गणले हाम्रो रक्षा गरून् र प्रसन्नता प्रदान गरून्।

**आ पूषञ्चित्रबर्हिषमाघृणे धरुणं दिवः। आजा नष्टं यथा पशुम् ॥१३॥**
हे दीप्तिमान् पूषादेव! तिमी अद्भुत तेजयुक्त एवं धारणशक्तिले सम्पन्न छौ। अतः हराएका पशु खोजेर ल्याइएझैं द्युलोकबाट सोमरस ल्याइदेऊ।

**पूषा राजानमाघृणिरपगूळ्हं गुहा हितम्। अविन्दच्चित्रबर्हिषम् ॥१४॥**
प्रकाशपुञ्जस्वरूप पूषादेवले अन्तरिक्षका गुफामा लुकेको र स्वच्छ तेजले युक्त रसराज सोमलाई फेला पार्नेछन्।

**उतो स मह्यमिन्दुभिः षड्युक्ताँ अनुसेषिधत्। गोभिर्यवं न चर्कृषत् ॥१५॥**

तिनै पूषादेव हाम्रो यज्ञका निम्ति बनेका सोमरससित वसन्त आदि छ ऋतुहरू प्राप्त गर्दछन्। जसरी किसानले बारम्बार जोतेर जौ आदि खाद्यान्न फेला पार्छ ती ऋतुहरू उसरी नै क्रमैसँग फेला पर्दछन्।

**अम्बयो यन्त्यध्वभिर्जामयो अध्वरीयताम्। पृञ्चतीर्मधुना पयः ॥१६॥**

यज्ञको इच्छा गर्नेहरूका सहायक र मधुर रसको रूपमा रहेका जलप्रवाहहरू आमाजस्तै पुष्टिदायक छन्। दुधलाई पौष्टिक गराउँदै तिनीहरू यज्ञमार्गबाट गमन गर्दछन्।

**अमूर्या उप सूर्ये याभिर्वा सूर्यः सह। ता नो हिन्वन्त्वध्वरम् ॥१७॥**

जेजति जल सूर्यमा विलीन भएको छ, अथवा जेजति जल सूर्यका नजिक छ, त्यही पवित्र जल हाम्रो यज्ञका लागि उपलब्ध होस्।

**अपो देवीरुप ह्वये यत्र गावः पिबन्ति नः। सिन्धुभ्यः कर्त्वं हविः ॥१८॥**

हाम्रा गाईले सेवन गर्ने जलको हामी स्तुति गर्दछौँ। त्यही प्रवाहमान जलका लागि हामी हवि अर्पण गर्दछौँ।

**अप्स्वन्तरमृतमप्सु भेषजमपामुत प्रशस्तये। देवा भवत वाजिनः ॥१९॥**

जलमा अमृतको समान गुण छ। जलमा औषधीको गुण छ। हे देवताहरू हो ! यस्ता जलको प्रशंसा गर्न तिमीहरू उत्साहित होओ।

**अप्सु मे सोमो अब्रवीदन्तर्विश्वानि भेषजा।**
**अग्निं च विश्वशम्भुवमापश्च विश्वभेषजीः ॥२०॥**

जलमा सबै औषधीहरू मिसिएका छन्, जलमा नै सर्वसुखप्रदायक अग्नितत्त्व निहित छ र सबै औषधी जलबाट नै प्राप्त हुन्छन् भन्ने कुरो सोमदेवले मसित भनेका छन्।

**आपः पृणीत भेषजं वरूथं तन्वेऽमम। ज्योक् च सूर्यं दृशे ॥२१॥**

हे जलसमूह ! हाम्रा शरीरमा जीवन रक्षक औषधीहरू स्थिर गराओ, त्यसबाट हामी निरोगी भई बाँचौँ र सधैँका लागि सूर्यदेवको दर्शन गर्न पाऔँ।

**इदमापः प्र वहत यत्किं च दुरितं मयि।**
**यद्वाहमभिदुद्रोह यद्वा शेप उतानृतम् ॥२२॥**

हे जलदेवताहरू हो ! हामी याजकहरूले अज्ञानतावश कुनै दुष्कृत्य गरेको भए, जानीबुझीकन कसैसित द्रोह गरेको भए, सत्पुरुषहरूमाथि रिस गरेको भए अथवा असत्य आचरण गरेको भए ती सबै बगाएर लगिदेओ।

**आपो अद्यान्वचारिषं रसेन समगस्महि।**
**पयस्वानग्न आ गहि तं मा सं सृज वर्चसा ॥२३॥**

आज हामीले जलमा पसेर निर्धक्क स्नान गरेका छौँ। यसरी जलमा प्रवेश गरेर हामी रसले भिजेका छौँ। हे पयस्वान् ! हे अग्निदेव ! तिमीहरू हामीलाई वर्चस्वशाली बनाइदेओ, हामी तिमीहरूको स्वागत गर्दछौँ।

**सं माग्ने वर्चसा सृज सं प्रजया समायुषा।**
**विद्युर्मे अस्य देवा इन्द्रो विद्यात्सह ऋषिभिः ॥२४॥**

हे अग्निदेव ! हामीलाई तेज प्रदान गर। हामीलाई सन्तान र लामो आयु देऊ। देवताले हाम्रो अनुष्ठान चिनून् र इन्द्रदेवले ऋषिहरूबाट यसको महत्त्व बुझून्।

[सूक्त - २४]

**ऋषि** – शुनःशेप आजीगर्ति। **देवता** – अग्नि सविता वरुण। **छन्द** – त्रिष्टुप् गायत्री।

**कस्य नूनं कतमस्यामृतानां मनामहे चारु देवस्य नाम।**
**को नो मह्या अदितये पुनर्दात्पितरं च दृशेयं मातरं च ॥१॥**

हामी अमर देवताहरूमा कुन देवताको सुन्दर नाम स्मरण गरौँ ? कुन देवताले हामीलाई आफ्ना मातापिता देख्न पाउने गरी महान् अदिति र पृथ्वी उपलब्ध गराउँछन्।

अग्नेर्वयं प्रथमस्यामृतानां मनामहे चारु देवस्य नाम।
स नो मह्या अदितये पुनर्दात्पितरं च दृशेयं मातरं च ॥२॥

अमर देवताहरूमा हामी पहिले अग्निदेवको सुन्दर नाम स्मरण गरौं। उनैले हामीलाई महान् अदिति प्राप्त गराउँछन्, अनि हामीले आफ्ना मातापितालाई देख्न पाउनेछौं।

अभि त्वा देव सवितरीशानं वार्याणाम्। सदावन्भागमीमहे ॥३॥

हे सधैंका रक्षक सवितादेव ! स्वीकार गर्न योग्य धनका तिमी स्वामी हौ। त्यसैले तिमीसँग हामी ऐश्वर्यको उत्तम भाग माग्दछौं।

यश्चिद्धि त इत्था भगः शशमानः पुरा निदः। अद्वेषो हस्तयोर्दधे ॥४॥

हे सवितादेव ! तिमी तेजले युक्त, निन्दारहित, द्वेषरहित, स्वीकार गर्न योग्य धन दुवै हातले धारण गर्दछौ।

भगभक्तस्य ते वयमुदशेम तवावसा। मूर्धानं राय आरभे ॥५॥

हे सवितादेव ! हामी तिम्रो ऐश्वर्यका छायामा रहेर संरक्षण प्राप्त गरौं। उन्नति गर्दै सफलताका सर्वोच्च शिखरसम्म पुगेर पनि आफ्नो कर्तव्य पूरा गरिरहौं।

नहि ते क्षत्रं न सहो न मन्युं वयश्चनामी पतयन्त आपुः।
नेमा आपो अनिमिषं चरन्तीर्न ये वातस्य प्रमिनन्त्यभ्वम् ॥६॥

हे वरुणदेव ! यी उड्ने पक्षीहरूले तिम्रो पराक्रम, बल र नीतियुक्त रिस जानेका छैनन्। निरन्तर प्रवाहमान जलप्रवाहले तिम्रो गमनशील गति जान्न सक्दैन र प्रबल वायुका वेगले पनि तिमीलाई रोक्न सक्दैन।

अबुध्ने राजा वरुणो वनस्योर्ध्वं स्तूपं ददते पूतदक्षः।
नीचीनः स्थुरुपरि बुध्न एषामस्मे अन्तर्निहिताः केतवः स्युः ॥७॥

सबैलाई आफूमा समेट्न सक्ने, पवित्र, पराक्रमी र राजा वरुणले दिव्य तेजका धनी सूर्यदेवलाई आधारहीन आकाशमार्गमा धारण गरेका छन्। त्यस तेजपुञ्जको मुख तलतिर फर्केको र शरीर माथितिर रहेको छ। यसका बीच भागमा दिव्य किरणहरू विस्तृत हुँदै आउँछन्।

उरुं हि राजा वरुणश्चकार सूर्याय पन्थामन्वेतवा उ।
अपदे पादा प्रतिधातवेऽकरुतापवक्ता हृदयाविधश्चित् ॥८॥

सूर्यलाई यात्रा गर्नका लागि राजा वरुणदेवले विशाल मार्ग निश्चित गरेका छन्। त्यस मार्गमा खुट्टा अडिँदैनन्। त्यस्तो अन्तरिक्षमा यात्रा गर्नेलाई पनि मार्ग बनाइदिएर उनले मनको बह मेटाइदिन्छन्।

शतं ते राजन्भिषजः सहस्रमुर्वी गभीरा सुमतिष्टे अस्तु।
बाधस्व दूरे निर्ऋतिं पराचैः कृतं चिदेनः प्र मुमुग्ध्यस्मत् ॥९॥

हे वरुणदेव ! तिमीसित असङ्ख्य उपायहरू छन्। तिम्रो बुद्धि उत्तम, व्यापक र अत्यन्त गम्भीर छ। तिमी पाप प्रवृत्तिलाई हामीदेखि टाढै राख। गरिएका पापबाट पनि हामीलाई मुक्त गरिदेऊ।

अमी य ऋक्षा निहितास उच्चा नक्तं ददृश्रे कुह चिद्दिवेयुः।
अदब्धानि वरुणस्य व्रतानि विचाकशच्चन्द्रमा नक्तमेति ॥१०॥

नक्षत्रहरू दिउँसो कतै विलीन भएर राति आकाशमा देखिन्छन्, विशेष प्रकाशयुक्त चन्द्रमा राति नै आउँछ। वरुण राजाको यो नियम कहिल्यै नष्ट हुँदैन।

तत्वा यामि ब्रह्मणा वन्दमानस्तदा शास्ते यजमानो हविर्भिः।
अहेडमानो वरुणेह बोध्युरुशंस मा न आयुः प्र मोषीः ॥११॥

हे वरुणदेव ! मन्त्ररूपी वाणीले हामी तिम्रो स्तुति गर्दछौं र तिमीसित याचना गर्दछौं। यजमानहरू हविष्यान्न अर्पित गर्दै हे बहुप्रशंसित देव ! हाम्रो उपेक्षा नगर, हाम्रो स्तुति सुनिदेऊ। हाम्रो आयु क्षीण नगराऊ भन्दछन्।

तदिन्नक्तं तद्दिवा मह्यमाहुस्तदयं केतो हृद आ वि चष्टे।
शुनः शेपो यमह्वद्गृभीतः सो अस्मान् राजा वरुणो मुमोक्तु ॥१२॥

ज्ञानीहरूका वचनअनुसार यस्तै ज्ञानको चिन्तन हाम्रा हृदयमा रातदिन रहिरहोस्। बन्धनमा परेका शुनःशेपले जुन वरुणदेवको आराधना गरेर मुक्ति पाएका थिए, उनै वरुणदेवले हामीलाई पनि बन्धनमुक्त गराऊन्।

**शुनः शेपो ह्यह्वद्गृभीतस्त्रिष्वादित्यं द्रुपदेषु बद्धः।**
**अवैनं राजा वरुणः ससृज्याद्विद्वाँ अदब्धो वि मुमोक्तु पाशान् ॥१३॥**

तीन वटा खम्बामा बाँधिएका शुनःशेपले अदितिपुत्र वरुणदेवलाई आह्वान गरे। त्यसपछि उनीसित हे ज्ञानी र अटल वरुणदेव ! हाम्रा पाशहरू काटिदिएर मुक्त गराऊ भनी निवेदन गरेका थिए।

**अव ते हेडो वरुण नमोभिरव यज्ञेभिरीमहे हविर्भिः।**
**क्षयन्नस्मभ्यमसुर प्रचेता राजन्नेनांसि शिश्रथः कृतानि ॥१४॥**

हे वरुणदेव ! तिम्रो क्रोध शान्त गर्नका लागि हामी स्तुति रूपी वचनहरू सुनाउँछौं। हे प्रकृष्ट बुद्धि भएका राजन् ! हवि रूपी द्रव्यले यस यज्ञमा सन्तुष्ट भएर तिमी हामीकहाँ निवास गर र हामीलाई पापका बन्धनबाट मुक्त गरिदेऊ।

**उदुत्तमं वरुण पाशमस्मदवाधमं वि मध्यमं श्रथाय।**
**अथा वयमादित्य व्रते तवानागसो अदितये स्याम ॥१५॥**

हे वरुणदेव ! हामीलाई तीनै किसिमका तापरूपी बन्धनहरूबाट मुक्त गर। यी आधिदैविक, आधिभौतिक र आध्यात्मिक नामका तीन किसिमका पाशहरू हामीदेखि टाढा होऊन्। हाम्रा मध्य एवं अधोभागका बन्धनहरूबाट छुटाइदेऊ। हे सूर्यपुत्र ! पापबाट मुक्त भएर हामी तिम्रै कर्मफलका सिद्धान्तमा अनुशासित होऔं। हाम्रो स्थिति दयनीय नहोस्।

## [सूक्त - २५]

**ऋषि** - शुनःशेप आजीगर्ति। **देवता** - वरुण। **छन्द** - गायत्री।

**यच्चिद्धि ते विशो यथा प्र देव वरुण व्रतम्। मिनीमसि द्यविद्यवि ॥१॥**

हे वरुणदेव ! जसरी अन्य मानिसहरू तिम्रो व्रत अनुष्ठानमा अल्छ्याइँ गर्दछन्, त्यसै गरी हामीबाट पनि तिम्रा नियम आदिका विषयमा हेलचेक्र्याइँ हुन सक्दछ।

**मा नो वधाय हत्नवे जिहीडानस्य रीरधः। मा हृणानस्य मन्यवे ॥२॥**

हे वरुणदेव ! आफ्नो अनादर गर्नेलाई वध गर्नका लागि तिमीले लिएको शस्त्र हाम्रा अगाडि प्रस्तुत नगर।

**वि मृळीकाय ते मनो रथीरश्वं न सन्दितम्। गीर्भिर्वरुण सीमहि ॥३॥**

हे वरुणदेव ! जसरी रथी वीरहरूले आफ्ना थाकेका घोडाको स्याहारसुसार गर्दछन्, उसै गरी तिम्रो मन खुसी पार्नका लागि हामी तिम्रो स्तुति गर्दछौं।

**परा हि मे विमन्यवः पतन्ति वस्यइष्टये। वयो न वसतीरुप ॥४॥**

हे वरुणदेव ! जसरी चराहरू आफ्ना गुँडतिर वेगले जान्छन्, त्यसै गरी हाम्रो चञ्चल बुद्धि पनि धन प्राप्तिका लागि टाढासम्म पुग्दछ।

**कदा क्षत्रश्रियं नरमा वरुणं करामहे। मृळीकायोरुचक्षसम् ॥५॥**

बलऐश्वर्यका अधिपति र सर्वद्रष्टा वरुणदेवलाई हामी कल्याणका निम्ति यस यज्ञमा कुनकुन बेला बोलाउने ?

**तदित्समानमाशाते वेनन्ता न प्र युच्छतः। धृतव्रताय दाशुषे ॥६॥**

व्रत लिएर बसेका यजमानले हविष्यान्न दान गर्दछन्। तिनै यजमानको हितका निम्ति यी मित्र र वरुणदेव हविष्यान्नको इच्छा गर्दछन्, उनीहरूले कहिल्यै पनि त्यो भावना त्याग गर्दैनन्।

**वेदा यो वीनां पदमन्तरिक्षेण पतताम्। वेद नावः समुद्रियः ॥७॥**

हे वरुणदेव ! अन्तरिक्षमा उड्ने पक्षी र समुद्रमा विचरण गर्ने नौकाको मार्ग पनि तिमीले जानेका छौ।

**वेद मासो धृतव्रतो द्वादश प्रजावतः। वेदा य उपजायते ॥८॥**

नियम बनाएर पालन गर्ने तथा पालन गराउने वरुणदेवलाई प्रजाको हित गर्ने बाह्रै महिनाको जानकारी छ र तेह्रौं अधिक मासका विषयमा पनि उनी जान्दछन्।

**वेद वातस्य वर्तनिमुरोर्ऋष्वस्य बृहतः। वेदा ये अध्यासते ॥९॥**

वरुणदेवले अत्यन्त विस्तृत, दर्शनीय र अत्यधिक गुणवान् वायुको मार्ग जानेका छन्। उनले माथि द्युलोकमा रहने देवताहरूलाई पनि चिनेका छन्।

नि षसाद धृतव्रतो वरुणः पस्त्याऽस्वा। साम्राज्याय सुक्रतुः ॥१०॥
प्रकृतिको नियम विधिवत् पालन गर्ने र सधैं श्रेष्ठ कर्महरूमा लागिरहने वरुणदेवले प्रजाहरूमा साम्राज्य स्थापित गर्न लागेका छन्।

अतो विश्वान्यद्भुता चिकित्वाँ अभि पश्यति। कृतानि या च कर्त्वा ॥११॥
जेजति कर्महरू पूरा भइसकेका छन् र जेजति पछि गरिनेछन्, कर्मको प्रक्रिया र विधि जान्ने अद्भुत वरुणदेवले ती सबै कर्महरू राम्ररी याद गरेका छन्।

स नो विश्वाहा सुक्रतुरादित्यः सुपथा करत्। प्र ण आयूंषि तारिषत् ॥१२॥
उत्तम कर्मशील अदितिपुत्र वरुणदेवले हामीलाई सधैं उचित मार्गतर्फ प्रेरित गरुन् र हाम्रो आयु बढाइरहून्।

बिभ्रद्द्रापिं हिरण्ययं वरुणो वस्त निर्णिजम्। परि स्पशो नि षेदिरे ॥१३॥
सुवर्णमय कवच धारण गरेर वरुणदेव आफ्नो हृष्टपुष्ट शरीर सजाउँछन्। उनको वरिपरि स्वच्छ किरणहरू छरिएका छन्।

न यं दिप्सन्ति दिप्सवो न द्रुह्वाणो जनानाम्। न देवमभिमातयः ॥१४॥
हिंसाको विचार लिएका शत्रुबाट हिंसा नगरिने र द्वेष गर्ने शत्रुबाट द्वेष पनि नगरिने हुनाले वरुणदेवलाई पापीहरूले छुन पनि सक्दैनन्।

उत यो मानुषेष्वा यशश्चक्रे असाम्या। अस्माकमुदरेष्वा ॥१५॥
जुन वरुणदेवले मानिसका लागि विपुल अन्नभण्डार उत्पन्न गरेका छन्, उनैले हाम्रा पेटमा पाचन सामर्थ्य पनि स्थापित गराएका हुन्।

परा मे यन्ति धीतयो गावो न गव्यूतीरनु। इच्छन्तीरुरुचक्षसम् ॥१६॥
सर्वद्रष्टा वरुणदेवको कामना गर्दछौं। हाम्रो बुद्धि गोठतिर गाई गएझैं उनीतिरै जान्छ।

सं नु वोचावहै पुनर्यतो मे मध्वाभृतम्। होतेव क्षदसे प्रियम् ॥१७॥
होताले झैं हामीले चढाएको हवि तिमी अग्निले झैं ग्रहण गर र हामी दुवै कुरा गरौं।

दर्शं नु विश्वदर्शतं दर्शं रथमधि क्षमि। एता जुषत मे गिरः ॥१८॥
रथका साथसाथै दर्शनयोग्य वरुणदेव पनि धर्तीमा देखिएका छन्। उनले हाम्रो स्तुति स्वीकार गरेका छन्।

इमं मे वरुण श्रुधी हवमद्या च मृडय। त्वामवस्युरा चके ॥१९॥
हे वरुणदेव ! तिमी हाम्रा प्रार्थनामा ध्यान देऊ र हामीलाई सुखी बनाऊ। आफ्नो रक्षाका लागि हामी तिम्रो स्तुति गर्दछौं।

त्वं विश्वस्य मेधिर दिवश्च ग्मश्च राजसि। स यामनि प्रति श्रुधि ॥२०॥
हे मेधावी वरुणदेव ! तिमीले द्युलोक, भूलोक र सारा विश्वमा आधिपत्य बनाइराखेका छौ। तिमी हाम्रो आह्वान स्वीकार गर र म रक्षा गर्नेछु भन्ने प्रत्युत्तर देऊ।

उदुत्तमं मुमुग्धि नो वि पाशं मध्यमं चृत। अवाधमानि जीवसे ॥२१॥
हे वरुणदेव ! हामीले अघिदेखि भनेको उत्तम पाश खोलिदेऊ, मध्यम पाश काटिदेऊ र अधोपाश हटाएर हामीलाई उत्तम जीवन प्रदान गर।

[सूक्त – २६]

ऋषि – शुनःशेप आजीगर्ति। देवता – अग्नि। छन्द – गायत्री।

वसिष्वा हि मियेध्य वस्त्राण्यूर्जां पते। सेमं नो अध्वरं यज ॥१॥
हे यज्ञ गर्नका लागि योग्य अन्नका अधिपति अग्निदेव ! तिमी आफ्ना तेजरूपी वस्त्र लाएर हाम्रो यज्ञ सम्पन्न गराऊ।

नि नो होता वरेण्यः सदा यविष्ठ मन्मभिः। अग्ने दिवित्मता वचः ॥२॥
हे सधैं तरुण रहने अग्निदेव ! तिमी सर्वोत्तम होताका रूपमा यज्ञकुण्डमा स्थापित होऊ र यजमानका स्तुतिवचनहरू सुनिदेऊ।

आ हि ष्मा सूनवे पितापिर्यजत्यापये। सखा सख्ये वरेण्यः ॥३॥
हे वरण गर्न योग्य वरुणदेव ! बाबुले छोरालाई, दाजुभाइले दाजुभाइलाई र मित्रले मित्रलाई सहयोग गरेझैं हामीलाई तिमी सहायता गर।

आ नो बर्ही रिशादसो वरुणो मित्रो अर्यमा। सीदन्तु मनुषो यथा ॥४॥
प्रजापतिका यज्ञमा मनु आएर शोभा बढाइदिएझैँ शत्रुनाशक वरुणदेव, मित्रदेव र अर्यमादेव हाम्रा यज्ञमा आएर विराजमान भइदिऊन्।

पूर्व्य होतरस्य नो मन्दस्व सख्यस्य च। इमा उ षु श्रुधी गिरः ॥५॥
उहिलेदेखिका होता हे अग्निदेव ! हाम्रा यस यज्ञबाट र हाम्रा मित्रभावबाट तिमी प्रसन्न होऊ। त्यसपछि हाम्रो स्तुति सुनिदेऊ।

यच्चिद्धि शश्वता तना देवन्देवं यजामहे। त्वे इद्धूयते हविः ॥६॥
हे अग्निदेव ! इन्द्र, वरुण आदि अन्य देवताहरूका लागि प्रतिदिन मनग्गे आहुति अर्पित गर्ने हुनाले पनि सबै हविष्यान्न तिमीलाई नै प्राप्त हुन्छ।

प्रियो नो अस्तु विश्पतिर्होता मन्द्रो वरेण्यः प्रियाः स्वग्नयो वयम् ॥७॥
हे यज्ञ सम्पन्न गर्ने, प्रजापालक, आनन्दवर्धक, वरण गर्न योग्य अग्निदेव ! तिमी हाम्रा लागि प्रिय छौ। उत्तम विधिले यज्ञको अग्नि रक्षा गर्दै हामी सधैँ तिम्रा प्रिय हुन पाऔँ।

स्वग्नयो हि वार्यं देवासो दधिरे च नः। स्वग्नयो मनामहे ॥८॥
देदीप्यमान अग्निले युक्त भएर ऋत्विक्हरूले हाम्रा लागि उत्तम ऐश्वर्य धारण गरेका छन्। उसै गरी हामी पनि उत्तम अग्निले युक्त भएर यी ऋत्विक्हरूको स्मरण गर्दछौँ।

अथा न उभयेषाममृत मर्त्यानाम्। मिथः सन्तु प्रशस्तयः ॥९॥
हे अमरत्व धारण गरेका अग्निदेव ! हामी मरणशील मनुष्य र तिम्रा बीचमा स्नेहयुक्त, प्रशंसनीय बोलीको व्यवहार सधैँ भइरहोस्।

विश्वेभिरग्ने अग्निभिरिमं यज्ञमिदं वचः। चनो धाः सहसो यहो ॥१०॥
बलका पुत्र हे अग्निदेव ! अरू अग्निहरूका साथमा तिमी यस यज्ञमा आइदेऊ र स्तुतिगान सुन्दै हामीलाई पोषणयुक्त अन्न प्रदान गर।

[सूक्त - २७]

ऋषि – शुनःशेप आजीगर्ति। देवता – अग्नि देवतागण। छन्द – गायत्री त्रिष्टुप्।

अश्वं न त्वा वारवन्तं वन्दध्या अग्निं नमोभिः। सम्राजन्तमध्वराणाम् ॥१॥
अन्धकार विनाशक, यज्ञका अधिपति हे अग्निदेव ! हामी तिम्रो स्तुति र वन्दना गर्दछौँ। घोडाका पुच्छरका रौँले झिँगा भगाएझैँ तिमी आफ्ना ज्वालाले हाम्रा विरोधीहरूलाई टाढा पन्छाइदेऊ।

स घा नः सूनुः शवसा पृथुप्रगामा सुशेवः। मीढ्वाँ अस्माकं बभूयात् ॥२॥
हामी यी अग्निदेवको उपासना उत्तम विधिले गर्दछौँ। बल गरेर काठबाट उत्पन्न गरिएका र चाँडै सर्वत्रितर फैलिने अग्निले हाम्रो लक्षित सुख प्रदान गरुन्।

स नो दूराच्चासाच्च नि मर्त्यादघायोः। पाहि सदमिद्विश्वायुः ॥३॥
हे अग्निदेव ! तिमी मनुष्यका हितचिन्तक हौ। त्यसैले टाढा अथवा नजिकैबाट अनिष्ट चिताउनेहरूबाट सधैँ हामीलाई तिमी जोगाऊ।

इममू षु त्वमस्माकं सनिं गायत्रं नव्यांसम्। अग्ने देवेषु प्र वोचः ॥४॥
हे अग्निदेव ! गायत्रीजस्तै प्राणपोषक हाम्रा स्तोत्र र नवीन अन्न देवताहरूसमक्ष तिमी पुऱ्याइदेऊ।

आ नो भज परमेष्वा वाजेषु मध्यमेषु। शिक्षा वस्वो अन्तमस्य ॥५॥
हे अग्निदेव ! हामीलाई श्रेष्ठ, मध्यम, र कनिष्ठ अर्थात् सबै प्रकारका धनसम्पदा तिमी प्रदान गर।

विभक्तासि चित्रभानो सिन्धोरूर्मा उपाक आ। सद्यो दाशुषे क्षरसि ॥६॥
सात ज्वालाहरूले दीप्तिमान् हे अग्निदेव ! तिमी धनदायक हौ। नदीमा पानीका छाल उर्लेझैं तत्काल तिमी हविष्यान्न दाताहरूलाई फल दिने गर्दछौ।

यमग्ने पृत्सु मर्त्यमवा वाजेषु यं जुनाः। स यन्ता शश्वतीरिषः ॥७॥
हे अग्निदेव ! जीवन सङ्ग्राममा जुन पुरुषहरूलाई तिमी प्रेरित गर्दछौ, तिनीहरूको रक्षा पनि स्वयं नै गर्दछौ। त्यसका साथै उनीहरूलाई पोषक अन्न पनि आपूर्ति गर्दछौ।

नकिरस्य सहन्त्य पर्येता कयस्य चित्। वाजो अस्ति श्रवाय्यः ॥८॥
हे शत्रुविजेता अग्निदेव ! तिम्रा उपासकहरूलाई कसैले पनि पराजित गर्न सक्दैन, किनभने उनीहरूको तेजस्विता प्रसिद्ध हुन्छ।

**स वाजं विश्वचर्षणिरर्वद्भिरस्तु तरुता। विप्रेभिरस्तु सनिता ॥९॥**

सबै मानिसका लागि हितकारी अग्निदेवले जीवनसङ्ग्राममा अश्वरूपी इन्द्रियहरूद्वारा हामीलाई विजयी बनाउनेछन्।

**जराबोध तद्विविड्ढि विशेविशे यज्ञियाय। स्तोमं रुद्राय दृशीकम् ॥१०॥**

स्तुतिवाक्यद्वारा देवताहरूलाई जागृत गराउने हे अग्निदेव ! यी यजमानले पवित्र स्थलका दुष्टतालाई विनाश गरुन् भनेर हामी तिमीलाई आह्वान गर्दछौं।

**स नो महाँ अनिमानो धूमकेतुः पुरुश्चन्द्रः। धिये वाजाय हिन्वतु ॥११॥**

प्रचुर मात्रामा धुवाँको ध्वजा फर्फराउने, आनन्ददायक र महान् अग्निदेवले हामीलाई ज्ञान र वैभवतिर प्रेरित गरुन्।

**स रेवाँ इव विश्पतिर्दैव्यः केतुः शृणोतु नः। उक्थैरग्निर्बृहद्भानुः ॥१२॥**

विश्वपालक, अत्यन्त तेजस्वी र ध्वजाझैं प्रस्ट देखिने गुणहरूले सम्पन्न दूरदर्शी अग्निदेव वैभवशाली राजाजस्तै भएर हाम्रा स्तुतिवाक्यहरू ग्रहण गरुन्।

**नमो महद्भ्यो नमो अर्भकेभ्यो नमो युवभ्यो नम आशिनेभ्यः।**
**यजाम देवान्यदि शक्नवाम मा ज्यायसः शंसमा वृक्षि देवाः ॥१३॥**

ठूला, साना, युवक र वृद्धहरू सबैलाई हामी नमस्कार गर्दछौं। सामर्थ्यअनुसार हामी देवताहरूको यजन गरौं। हे देवताहरू ! आफूभन्दा ठूलालाई गरिने सम्मानमा हामीबाट कुनै पनि त्रुटी नहोस्।

## [सूक्त - २८]

ऋषि - शुनःशेप आजीगर्ति। देवता - उलूखल मुसल सोम। छन्द - अनुष्टुप् गायत्री।

**यत्र ग्रावा पृथुबुध्न ऊर्ध्वो भवति सोतवे।**
**उलूखलसुतानामवेद्विन्द्र जल्गुलः ॥१॥**

हे इन्द्रदेव ! जहाँ सोमरस बनाउने वनस्पति कुट्न ठूलो मुसल उचालिन्छ त्यसै यज्ञशालामा बसेर ओखलमा कुटेर तयार गरिएको सोमरस पान गरिदेऊ।

**यत्र द्वाविव जघनाधिषवण्या कृता। उलूखलसुतानामवेद्विन्द्र जल्गुलः ॥२॥**

हे इन्द्रदेव ! जहाँ दुई जङ्घाझैं फैलिएका फल्याकहरू राखिएका छन् त्यस यज्ञशालामा ओखलमा कुटेर तयार गरिएको सोमरस पान गरिदेऊ।

**यत्र नार्यपच्यवमुपच्यवं च शिक्षते। उलूखलसुतानामवेद्विन्द्र जल्गुलः ॥३॥**

हे इन्द्रदेव ! जहाँ सोमरस तयार गर्न गृहिणीहरूले मुसल चलाएर कुट्ने परिश्रम गर्दछन् त्यस यज्ञशालामा ओखलमा कुटेर तयार गरिएको सोमरस पान गरिदेऊ।

**यत्र मन्थां विबध्नते रश्मीन्यमितवा इव।**
**उलूखलसुतानामवेद्विन्द्र जल्गुलः ॥४॥**

हे इन्द्रदेव ! सारथीले घोडालाई लगाम लगाएजस्तै पारेर जहाँ मदानीमा नेती बाँधेर मथ्ने गरिन्छ, त्यस यज्ञशालामा ओखलमा कुटेर तयार गरिएको सोमरस पान गरिदेऊ।

**यच्चिद्धि त्वं गृहेगृह उलूखलक युज्यसे।**
**इह द्युमत्तमं वद जयतामिव दुन्दुभिः ॥५॥**

हे ओखल र मुसल ! प्रत्येक घरमा तिमीहरूबाट काम लिइन्छ तापनि हाम्रा घरमा दुन्दुभिझैं ठूलो स्वर उत्पन्न गर।

**उत स्म ते वनस्पते वातो वि वात्यग्रमित्।**
**अथो इन्द्राय पातवे सुनु सोममुलूखल ॥६॥**

हे ओखल र मुसलरूपी वनस्पतिहरू ! तिमीहरूका सामु वायु विशेष गतिले बहन्छ। अब तिमीहरू इन्द्रदेवले सेवन गर्नका लागि सोमरस तयार गर।

**आयजी वाजसातमा ता ह्युच्चा विजर्भृतः। हरी इवान्धांसि बप्सता ॥७॥**

यज्ञको साधनका रूपमा पूजा गर्न योग्य यी ओखल र मुसलले अन्नका दाना खाएर ठूलो शब्द निकाल्दै छन्। त्यो शब्द इन्द्रदेवका दुई वटा घोडाले चना खाएको जस्तै सुनिँदै छ।

**ता नो अद्य वनस्पती ऋष्वावृष्वेभिः सोतृभिः। इन्द्राय मधुमत्सुतम् ॥८॥**

हे ओखल र मुसलरूपी वनस्पतिहरू ! तिमीहरू दुवै सुन्दर छौ। सोमयाग गर्नेहरूसँग रहेर इन्द्रदेवका लागि सोमरस तयार गर।

**उच्छिष्टं चम्वोर्भर सोमं पवित्र आ सृज। नि धेहि गोरधि त्वचि ॥९॥**

ओखल र मुसलबाट तयार गरिएको सोमरस भाँडाबाट निकालेर कुशका आसनमा राखौं र छानेर निस्केका खोस्टाजति पवित्र चर्ममा राखौं।

[सूक्त - २९]

**ऋषि** - शुनःशेप आजीगर्ति। **देवता** - इन्द्र। **छन्द** - पङ्क्ति।

**यच्चिद्धि सत्य सोमपा अनाशस्ता इव स्मसि।**
**आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥१॥**

हे सत्यस्वरूप सोमरस पान गर्ने इन्द्रदेव ! हामीहरू प्रशंसा पाउन योग्य पात्र त होइनौं, तापनि हे ऐश्वर्यशाली इन्द्रदेव ! हामीलाई असल गाई र घोडा दिएर सम्पन्न गराऊ।

**शिप्रिन्वाजानां पते शचीवस्तव दंसना।**
**आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥२॥**

हे इन्द्रदेव ! तिमी शक्तिशाली र शिरमा मुकुट लगाएका छौ। तिमी बलका अधीश्वर हुनाले ऐश्वर्यशाली छौ। तिम्रो कृपा हामीले सधैं पाइरहौं।

**नि ष्वापया मिथूदृशा सस्तामबुध्यमाने।**
**आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥३ ॥**

हे इन्द्रदेव ! आपद् र दरिद्रता यी दुवै दुर्गतिहरू आपसमा एकअर्कालाई हेर्दै निदाऊन्। तिनीहरू कहिल्यै जागा नहोऊन्, सधैं अचेत नै भइरहून्। हे ऐश्वर्यशाली इन्द्रदेव ! हामीलाई सहस्रौं असल गाई र घोडा दिएर सम्पन्न गराऊ।

**ससन्तु त्या अरातयो बोधन्तु शूर रातयः।**
**आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥४॥**

हे इन्द्रदेव ! हाम्रा शत्रुहरू सधैं निदाऊन र वीर मित्रहरू सधैं जागा होऊन्। हे ऐश्वर्यशाली इन्द्रदेव ! हामीलाई सहस्रौं असल गाई र घोडा दिएर सम्पन्न गराऊ।

**समिन्द्र गर्दभं मृण नुवन्तं पापयामुया।**
**आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥५॥**

हे इन्द्रदेव ! कपटपूर्ण कुरो बोल्ने शत्रुरूपी गधालाई मारिदेऊ। हे ऐश्वर्यशाली इन्द्रदेव ! हामीलाई सहस्रौं बलिया गाई र घोडा दिएर सम्पन्न गराऊ।

**पताति कुण्डृणाच्या दूरं वातो वनादधि।**
**आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥६॥**

हे इन्द्रदेव ! विध्वंसकारी आँधीबेहरी वनभन्दा टाढै मच्चिऊन्। हे ऐश्वर्यशाली इन्द्र ! हामीलाई सहस्रौं बलिया गाई र घोडा दिएर सम्पन्न गराऊ।

**सर्वं परिक्रोशं जहि जम्भया कृकदाश्वम्।**
**आ तू न इन्द्र शंसय गोष्वश्वेषु शुभ्रिषु सहस्रेषु तुवीमघ ॥७॥**

हे इन्द्रदेव ! हाम्रो डाहा गर्ने सबै शत्रुहरूको विनाश गर। हिंसा नाश गर। हे ऐश्वर्यका धनी इन्द्रदेव ! हामीलाई सहस्रौं बलिया गाई र घोडा दिएर सम्पन्न गराऊ।

[सूक्त - ३०]

**ऋषि** - शुनःशेप आजीगर्ति। **देवता** - इन्द्र अश्विनीकुमार। **छन्द** - गायत्री त्रिष्टुप्।

**आ व इन्द्रं क्रिविं यथा वाजयन्तः शतक्रतुम्। मंहिष्ठं सिञ्च इन्दुभिः ॥१॥**

अन्नको कामना गर्ने किसानले खेतमा पानी लगाएझैं हामी बलको कामना गर्ने साधकहरू महान् इन्द्रदेवलाई सोमरसले सेचन गर्दछौं।

**शतं वा यः शुचीनां सहस्रं वा समाशिराम्। एदु निम्नं न रीयते ॥२॥**

पानी ओरालोतिर बगेझैं गरी सयौं घडा सोमरसमा सयौं घडा दुध मिसिएर इन्द्रदेवलाई प्राप्त हुने गर्दछ।

सं यन्मदाय शुष्मिण एना ह्यस्योदरे। समुद्रो न व्यचो दधे ॥३॥

समुद्रमा पानी जम्मा भएझैं इन्द्रदेवका पेटमा सोमरस जम्मा भई आनन्द दिन्छ।

अयमु ते समतसि कपोत इव गर्भधिम्। वचस्तच्चिन्न ओहसे ॥४॥

हे इन्द्रदेव ! गर्भिणी पोथीसँग भाले ढुकुर बसेझैं स्नेहपूर्वक पेटमा बस्ने यो सोमरस तिम्रा लागि प्रस्तुत छ। तिमी हाम्रो निवेदन स्वीकार गर।

स्तोत्रं राधानां पते गिर्वाहो वीर यस्य ते। विभूतिरस्तु सूनृता ॥५॥

हे धनका अधिपति ! हे इन्द्र ! हे स्तुतिहरूका आश्रयदेव ! हे वीर ! इत्यादि भनेर जुन स्तोताहरूले तिम्रो स्तुति गर्दछन् उनीहरूलाई तिम्रो विभूति र सत्यता सिद्ध होस्।

ऊर्ध्वस्तिष्ठा न ऊतयेऽस्मिन्वाजे शतक्रतो। समन्येषु ब्रवावहै ॥६॥

सयौं यज्ञ आदि उत्तम कार्य सम्पन्न गर्ने हे इन्द्रदेव ! जीवनका सङ्ग्राममा हाम्रो संरक्षण गर्नका लागि सधैं प्रयत्नशील रहिदेऊ। तिमीबाट हुने गरेका अन्य उत्तम कार्यहरूका विषयमा पनि हामी परस्पर विचार विनिमय गरिरहनेछौं।

योगेयोगे तवस्तरं वाजेवाजे हवामहे। सखाय इन्द्रमूतये ॥७॥

सत्कर्मको शुभारम्भ गर्ने र हरेक किसिमका सङ्ग्राममा बलशाली सिद्ध हुने गरेका इन्द्रदेवलाई हामी आफ्नो संरक्षणका लागि मित्रका रूपमा आह्वान गर्दछौं।

आ घा गमद्यदि श्रवत्सहस्रिणीभिरूतिभिः। वाजेभिरुप नो हवम् ॥८॥

हाम्रो प्रार्थनाबाट प्रसन्न भएर निश्चित रूपमा रक्षा गर्नका लागि सहस्रौं किसिमका साधन र अन्नऐश्वर्य लिएका इन्द्रदेव हामीकहाँ आउनेछन्।

अनु प्रत्नस्यौकसो हुवे तुविप्रतिं नरम्। यं ते पूर्वं पिता हुवे ॥९॥

स्वर्गधामका निवासी, ठाउँमै पुगेर धेरैलाई नेतृत्व गर्ने इन्द्रदेवलाई हामी सहायताका लागि आह्वान गर्छौं। हाम्रा पुर्खाले पनि यसै गरेका थिए।

तं त्वा वयं विश्ववारा शास्महे पुरुहूत। सखे वसो जरितृभ्यः ॥१०॥

हे विश्वले वन्दना गर्ने इन्द्रदेव ! धेरै तिरबाट बोलाइन्छौ। त्यसो हुनाले तिमी स्तोताका भरोसिला मित्र हौ। हामी ऋत्विक्‌हरू स्तोतालाई सहयोग गर भनेर प्रार्थना गर्दछौं।

अस्माकं शिप्रिणीनां सोमपाः सोमपाव्नाम्। सखे वज्रिन्त्सखीनाम् ॥११॥

हे सोमरस पान गर्ने वज्रधारी इन्द्रदेव ! सोमरस पान गर्न योग्य हाम्रा प्रियजन र मित्रहरूमध्ये तिमी नै श्रेष्ठ र समर्थ हौ।

तथा तदस्तु सोमपाः सखे वज्रिन्तथा कृणु। यथा त उश्मसीष्टये ॥१२॥

हे सोमरस पान गर्ने वज्रधारी इन्द्रदेव ! हाम्रो इच्छा पूर्ण गराइदेऊ। हामी लक्ष्य प्राप्तिका लागि तिम्रै कामना गरौं र तिमी त्यो लक्ष्य पूरा गरिदेऊ।

रेवतीर्नः सधमाद इन्द्रे सन्तु तुविवाजाः। क्षुमन्तो याभिर्मदेम ॥१३॥

जुन इन्द्रदेवका कृपाले हामी धनधान्यले परिपूर्ण भएर प्रफुल्लित हुन्छौं, उनकै प्रभावले हाम्रा गाईहरू पनि प्रशस्त मात्रामा दुध, घिउ आदि दिन सक्ने होऊन्।

आ घ त्वावान्त्मनाप्तः स्तोतृभ्यो धृष्णवियानः। ऋणोरक्षं न चक्र्योः ॥१४॥

हे धैर्यशाली इन्द्रदेव ! कल्याणकारी बुद्धिले स्तुति गर्ने स्तोताहरूलाई अभीष्ट पदार्थ अवश्य प्रदान गर। तिमी स्तोताहरूलाई धन दिनका लागि रथका पाङ्ग्राहरू आपसमा जोड्ने धुराजस्तै सहायक छौ।

आ यद्दुवः शतक्रतवा कामं जरितॄणाम्। ऋणोरक्षं न शचीभिः ॥१५॥

हे इन्द्रदेव ! स्तोताहरूले इच्छा गरेको धन उनीहरूलाई प्रदान गर। रथका गतिले उसैका धुरालाई पनि गति प्राप्त भएझैं स्तुतिकर्ताहरूलाई पनि धन प्राप्त होस्।

शश्वदिन्द्रः पोप्रुथद्भिर्जिगाय नानदद्भिः शाश्वसद्भिर्धनानि। स नो हिरण्यरथं दंसनावान्त्स नः सनिता सनये स नोऽदात् ॥१६॥

सधैं जोसिला शब्द निकाल्दै र हिल्लिँदै तीव्र गतिमा कुद्ने घोडाहरूका सहायताले शत्रुको धन जित्ने पराक्रमी इन्द्रदेव स्नेहपूर्वक हामीलाई सुनको रथ दिन्छन्।

आश्विनावश्वावत्येष यातं शवीरया। गोमद्दस्रा हिरण्यवत् ॥१७॥
हे शक्तिशाली अश्विनीकुमारहरू हो ! बलशाली घोडाका साथै अन्न, गाई र सुन आदि धन लिएर यहाँ आओ।

समानयोजनो हि वां रथो दस्त्रावमर्त्यः। समुद्रे अश्विनेयते ॥१८॥
हे अश्विनीकुमारहरू हो ! दुवैका लागि घोडा नारिएको एउटै रथ आकाशको मार्गबाट यहाँ आउनेछ। त्यसलाई कसैले नष्ट गर्न सक्दैन।

न्य१घ्न्यस्य मूर्धनि चक्रं रथस्य येमथुः। परि द्यामन्यदीयते ॥१९॥
हे अश्विनीकुमारहरू हो ! तिमीहरूका रथको एउटा पाङ्ग्रो पृथ्वीका चुलीमा रहेको छ र अर्को द्युलोकमा सर्वत्र गतिशील रहेको छ।

कस्त उषः कधप्रिये भुजे मर्तो अमर्त्ये। कं नक्षसे विभावरि ॥२०॥
हे स्तुति रुचाउने, अमर, तेजोमयी उषा ! तिम्रो सेवा कसले गर्न पाउँछ ? कसले तिमीलाई प्राप्त गर्दछ ?

वयं हि ते अमन्मह्याऽन्तादा पराकात्। अश्वे न चित्रे अरुषि ॥२१॥
हे अश्वयुक्त चित्रविचित्र प्रकाशमा रङ्गिएकी उषा ! हामी टाढा वा नजिकै जहाँबाट भए पनि तिम्रो महिमा जान्न सक्ने छैनौं।

त्वं त्येभिरा गहि वाजेभिर्दुहितर्दिवः। अस्मे रयिं नि धारय ॥२२॥
हे द्युलोककी पुत्री उषा ! तिमी उनै दिव्य बलका साथ यहाँ आऊ र हामीलाई उत्तम ऐश्वर्य धारण गराइदेऊ।

[सूक्त - ३१]

ऋषि - हिरण्यस्तूप आङ्गिरस। देवता - अग्नि। छन्द - जगती त्रिष्टुप्।

त्वमग्ने प्रथमो अङ्गिरा ऋषिर्देवो देवानामभवः शिवः सखा।
तव व्रते कवयो विद्मनापसोऽजायन्त मरुतो भ्राजदृष्टयः ॥१॥
हे अग्निदेव ! सर्वप्रथम तिमी अङ्गिरा ऋषिका रूपमा प्रकट भयौ। त्यसपछि तिमी सर्वद्रष्टा, दिव्यतायुक्त, कल्याणकारी र देवताहरूमा सर्वश्रेष्ठ मित्रका रूपमा सम्मानित भयौ। तिम्रा व्रतको अनुशासनबाट मरुत्गण क्रान्तदर्शी कर्मका ज्ञाता भए र श्रेष्ठ तेजस्वी शस्त्र उनीहरूले प्राप्त गरेका छन्।

त्वमग्ने प्रथमो अङ्गिरस्तमः कविर्देवानां परि भूषसि व्रतम्।
विभुर्विश्वस्मै भुवनाय मेधिरो द्विमाता शयुः कतिधा चिदायवे ॥२॥
हे अग्निदेव ! तिमी अङ्गिराहरूमा प्रथम र शिरोमणि हौ र देवताहरूका लागि सुहाउँदो नियम बनाउँछौ। तिमी संसारमा व्याप्त छौ र तिम्रा माताका स्थानमा दुई अरणीहरू रहेका छन्। तिनै अरणीहरूका मन्थनबाट तिमी उत्पन्न भएका हौ र बुद्धिमान् छौ। तिमी सर्वत्र मानिसको हितका निम्ति विद्यमान रहेका छौ।

त्वमग्ने प्रथमो मातरिश्वन आविर्भव सुक्रतूया विवस्वते।
अरेजेतां रोदसी होतृवूर्येऽसघ्नोर्भारमयजो महो वसो ॥३॥
हे अग्निदेव ! तिमी ज्योतिर्मय सूर्यदेव र वायुभन्दा पनि पहिले नै उत्पन्न भएका हौ। तिम्रा बलले आकाश र पृथ्वी कम्पित भए। होताका रूपमा वरण गरिँदा तिमीले यज्ञका कार्यहरू सम्पादन गर्‍यौ। देवताहरूको यजन कार्य पूर्ण गर्नका लागि तिमी यज्ञका वेदीमा स्थापित भयौ।

त्वमग्ने मनवे द्यामवाशयः पुरूरवसे सुकृते सुकृत्तरः।
श्वात्रेण यत्पित्रोर्मुच्यसे पर्या त्वा पूर्वमनयन्नापरं पुनः ॥४॥
हे अग्निदेव ! तिमी अत्यन्त श्रेष्ठ कर्म भएका छौ। तिमीले मनु र असल कर्म गरी सुकर्मा भन्ने ख्याति पाएका पुरुरवालाई स्वर्गको महत्त्व अवगत गरायौ। मातापिताका रूपमा रहेका दुई वटा काठको मन्थनबाट तिमी उत्पन्न भयौ। तिमी सूर्यदेवझैं पूर्वदेखि पश्चिमसम्म व्याप्त भएका छौ।

त्वमग्ने वृषभः पुष्टिवर्धन उद्यतस्रुचे भवसि श्रवाय्यः।
य आहुतिं परि वेदा वषट्कृतिमेकायुरग्रे विश आविवाससि ॥५॥
हे अग्निदेव ! तिमी ज्यादै बलशाली र पुष्टिदायक छौ। हविदाताहरू स्रुवा हातमा लिएर स्तुति गर्न लागेका छन्। उनीहरूले वषट्कारसहितको आहुति दिनेछन्। त्यस्ता याजकलाई तिमी अग्रणी पुरुषका रूपमा प्रतिष्ठित गराउँछौ।

त्वमग्ने वृजिनवर्तनिं नरं सक्मन्पिपर्षि विदथे विचर्षणे।
यः शूरसाता परितक्म्ये धने दभ्रेभिश्चित्समृता हंसि भूयसः ॥६॥

हे विशिष्ट द्रष्टा अग्निदेव ! तिमी पापीहरूलाई पनि उद्धार गर्दछौ। बहुसङ्ख्यक शत्रुहरूद्वारा अनेकौं तिरबाट आक्रमण हुँदा पनि केही वीर पुरुषहरूलाई साथमा लिएर सबै शत्रुहरूलाई धराशायी बनाउँछौ।

त्वं तमग्ने अमृतत्व उत्तमे मर्तं दधासि श्रवसे दिवेदिवे।
यस्तातृषाण उभयाय जन्मने मयः कृणोषि प्रय आ च सूरये ॥७॥

हे अग्निदेव ! तिमी आफ्ना अनुयायीहरूलाई सधैं अमर पदका अधिकारी बनाउँछौ। त्यो अमर पद पाउनका लागि देवगण र मनुष्य दुवैले उत्कट अभिलाषा गर्दछन्। तिमी वीर पुरुषहरूलाई अन्न र धनबाट सुखी बनाउँछौ।

त्वं नो अग्ने सनये धनानां यशसं कारुं कृणुहि स्तवानः।
ऋध्याम कर्मापसा नवेन देवैर्द्यावापृथिवी प्रावतं नः ॥८॥

हे प्रशंसा पाइरहने हे अग्निदेव ! हामीलाई धन प्राप्त गर्ने सामर्थ्य देऊ र यशस्वी पुत्र प्रदान गर। नयाँ उत्साहका साथ हामी यज्ञ आदि गरौं। द्यावापृथिवी र देवगणले सबै किसिमले हामीलाई रक्षा गरुन्।

त्वं नो अग्ने पित्रोरुपस्थ आ देवो देवेष्वनवद्य जागृविः।
तनूकृद्बोधि प्रमतिश्च कारवे त्वं कल्याण वसु विश्वमोपिषे ॥९॥

हे निश्छल अग्निदेव ! सबै देवताहरूमध्ये चैतन्य रूपमा रहेका तिमी हाम्रा लागि मातापिताजस्तै हौ। तिमीले हामीलाई ज्ञान प्राप्त गर्ने सामर्थ्य दियौ, कर्ममा प्रवृत्त रहने बुद्धिको विकास गरिदियौ। हे कल्याणरूपी अग्निदेव ! हामीलाई सबै खालका ऐश्वर्य पनि प्रदान गर।

त्वमग्ने प्रमतिस्त्वं पितासि नस्त्वं वयस्कृत्तव जामयो वयम्।
सं त्वा रायः शतिनः सं सहस्रिणः सुवीरं यन्ति व्रतपामदाभ्य ॥१०॥

हे अग्निदेव ! तिमी विशिष्ट बुद्धिले सम्पन्न छौ। तिमी हाम्रा लागि पिताजस्तै हौ, आयु प्रदान गर्दछौ र दाजुभाइजस्तै आफन्त हौ। तिमी उत्तम वीर, अटल गुणसम्पन्न, स्पष्ट नियमपालक र असङ्ख्य धनले सम्पन्न छौ।

त्वामग्ने प्रथममायुमायवे देवा अकृण्वन्नहुषस्य विश्पतिम्।
इडामकृण्वन्मनुषस्य शासनीं पितुर्यत्पुत्रो ममकस्य जायते ॥११॥

हे अग्निदेव ! देवताहरूले सर्वप्रथम तिमीलाई मानिसहरूका हितका लागि राजाका रूपमा स्थापित गराए। त्यसपछि जब हाम्रा पुर्खा अङ्गिरा ऋषिले तिमीलाई पुत्रका रूपमा उत्पन्न गराए। त्यसपछि देवताहरूले मनुकी पुत्री इडालाई शासन गर्न तथा अनुशासन र धर्मको उपदेश दिने कामका लागि तिमीलाई नै उत्पन्न गरे।

त्वं नो अग्ने तव देव पायुभिर्मघोनो रक्ष तन्वश्च वन्द्य।
त्राता तोकस्य तनये गवामस्यनिमेषं रक्षमाणस्तव व्रते ॥१२॥

हे अग्निदेव ! तिमी वन्दनायोग्य छौ। आफ्ना रक्षक हतियारहरूले हामी वैभवशालीको रक्षा गर। हाम्रा शारीरिक क्षमतालाई आफ्नो सामर्थ्यले पोषित गर। तिमी शीघ्रतापूर्वक संरक्षित गर्ने हुनाले हाम्रा छोरानाति र गाई आदि पशुहरूको संरक्षण तिमीबाटै होस्।

त्वमग्ने यज्यवे पायुरन्तरोऽनिषङ्गाय चतुरक्ष इध्यसे।
यो रातहव्योऽवृकाय धायसे कीरेश्चिन्मन्त्रं मनसा वनोषि तम् ॥१३॥

हे अग्निदेव ! तिमी याजकहरूका पोषक हौ। जुन सज्जनले तिमीलाई श्रेष्ठ तथा पोषक हविष्यान्न दिन्छन्, तिनीहरूको तिमी सबै किसिमले रक्षा गर्दछौ। तिमी साधकहरूको स्तुति हृदयबाटै स्वीकार गर्दछौ।

त्वमग्न उरुशंसाय वाघते स्पार्हं यद्रेक्णः परमं वनोषि तत्।
आध्रस्य चित्प्रमतिरुच्यसे पिता प्र पाकं शास्सि प्रदिशो विदुष्टरः ॥१४॥

हे अग्निदेव ! स्तुति गर्ने ऋत्विकहरूलाई धन दिन्छौ, दुर्बलहरूका लागि पिताझैं भएर तिमी पालन गर्दछौ। अज्ञानीलाई विशिष्ट ज्ञान दिने मेधावी तिमी नै हौ।

त्वमग्ने प्रयतदक्षिणं नरं वर्मेव स्यूतं परि पासि विश्वतः ।
स्वादुक्षद्मा यो वसतौ स्योनकृज्जीवयाजं यजते सोपमा दिवः ॥१५॥

हे अग्निदेव ! तिमी कवचका रूपमा रहेर पुरुषार्थी यजमानलाई सुरक्षा गर्दछौ। जसले आफ्ना घरको मिठो हविष्यान्न चढाएर सुखप्रद यज्ञ गर्दछ, त्यसको घर स्वर्गसित तुलना गर्न योग्य हुन्छ।

इमामग्ने शरणिं मीमृषो न इममध्वानं यमगाम दूरात् ।
आपिः पिता प्रमतिः सोम्यानां भृमिरस्यृषिकृन्मर्त्यानाम् ॥१६॥

हे अग्निदेव ! यज्ञका समयमा भएका हाम्रा भुलहरू क्षमा गर। जुन मानिस यज्ञ कर्मबाट विचलित भएका छन् तिनलाई क्षमा गर। तिमी सोमयाग गर्ने याजकहरूका बन्धु र पिता हौ। सद्बुद्धि प्रदान गर्ने ऋषिहरू कुशल कर्मका प्रणेता हुन्।

मनुष्वदग्ने अङ्गिरस्वदङ्गिरो ययातिवत्सदने पूर्ववच्छुचे ।
अच्छ याह्या वहा दैव्यं जनमा सादय बर्हिषि यक्षि च प्रियम् ॥१७॥

हे पवित्र अङ्गिरा (अङ्गअङ्गमा विद्यमान) अग्निदेव ! मनु, अङ्गिरा ऋषि, ययातिजस्ता पुरुषहरूलाई आफूसितै देवलोक लैजाऊ र आफू पनि यज्ञस्थलमा सुशोभित होऊ। उनीहरूलाई कुशको आसनमा बसाउँदै सम्मानित गर।

एतेनाग्ने ब्रह्मणा वावृधस्व शक्ती वा यत्ते चकृमा विदा वा ।
उत प्र णेष्यभि वस्यो अस्मान्त्सं नः सृज सुमत्या वाजवत्या ॥१८॥

हे अग्निदेव ! मन्त्रजस्ता स्तुतिले तिम्रो भलो होस्। आफ्नो शक्ति या ज्ञानले हामी जुन यज्ञ गर्दछौँ, त्यसैबाट हामीलाई ऐश्वर्य प्रदान गर। बल बढाउने अन्नका साथै असल बुद्धिले हामीलाई सम्पन्न गराऊ।

[सूक्त - ३२]

ऋषि - हिरण्यस्तूप आङ्गिरस। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

इन्द्रस्य नु वीर्याणि प्र वोचं यानि चकार प्रथमानि वज्री ।
अहन्नहिमन्वपस्ततर्द प्र वक्षणा अभिनत्पर्वतानाम् ॥१॥

मेघ फुटाएर पानी वर्साउने, पर्वतबाट बग्ने नदीका किनारा बनाउने, वज्र हातमा लिने र पराक्रमी इन्द्रदेवका कार्यहरू वर्णनीय छन्। उनले गरेका वीरतापूर्ण कार्य यिनै हुन्।

अहन्नहिं पर्वते शिश्रियाणं त्वष्टास्मै वज्रं स्वर्यं ततक्ष ।
वाश्रा इव धेनवः स्यन्दमाना अञ्जः समुद्रमव जग्मुरापः ॥२॥

इन्द्रका लागि त्वष्टाले शब्दचालित वज्र निर्माण गरे, त्यसै वज्रले देवराज इन्द्रले मेघ फोरेर जल वर्साए। गाईको बथान कराएझैं पानीको त्यो प्रवाह समुद्रतिर बग्यो।

वृषायमाणोऽवृणीत सोमं त्रिकद्रुकेष्वपिबत्सुतस्य ।
आ सायकं मघवादत्त वज्रमहन्नेनं प्रथमजामहीनाम् ॥३॥

अत्यन्त बलशाली इन्द्रदेवले सोमरस ग्रहण गरे। यज्ञमा तीन वटा विशिष्ट पात्रमा तयार गरिएको सोमरस उनले पान गरे। ऐश्वर्यवान् इन्द्रले बाण र वज्र लिएर मेघमध्येका प्रमुख मेघलाई च्याते।

यदिन्द्राहन्प्रथमजामहीनामान्मायिनाममिनाः प्रोत मायाः ।
आत्सूर्यं जनयन्द्यामुषासं तादीत्ना शत्रुं न किला विवित्से ॥४॥

हे इन्द्रदेव ! तिमीले मेघहरूमध्ये पहिले उत्पन्न भएका मेघलाई चिरा पार्‍यौ। मेघका रूपमा आएको कुहिरो पर हटायौ। त्यसपछि आकाशमा उषा र सूर्य प्रकट गर्‍यौ। अब कोही पनि अवरोध गर्ने शत्रुहरू बाँकी रहेका छैनन्।

अहन्वृत्रं वृत्रतरं व्यंसमिन्द्रो वज्रेण महता वधेन ।
स्कन्धांसीव कुलिशेना विवृक्णाऽहिः शयत उपपृक्पृथिव्याः ॥५॥

इन्द्रदेवले घातक दिव्य वज्रले वृत्रासुरको वध गरे। बन्चराले रुखका हाँगा छिमलेझैं त्यसका पाखुरा काटे र रुखको थाम काटेझैं उसलाई काटेर भूमिमा ढलाइदिए।

अयोद्धेव दुर्मद आ हि जुह्वे महावीरं तुविबाधमृजीषम्।
नातारीदस्य समृतिं वधानां सं रुजानाः पिपिष इन्द्रशत्रुः ॥६॥

आफूलाई अद्वितीय योद्धा मात्रै मिथ्याभिमानी वृत्रले महाबली, शत्रुनाशक, इन्द्रदेवलाई चुनौती दियो तर उसले इन्द्रदेवको प्रहार खप्न सकेन र ऊ ढल्यो। त्यति बेला नदीका किनारा भत्किए।

अपादहस्तो अपृतन्यदिन्द्रमास्य वज्रमधि सानौ जघान।
वृष्णो वध्रिः प्रतिमानं बुभूषन्पुरुत्रा वृत्रो अशयद्व्यस्तः ॥७॥

हात र खुट्टा काटिएपछि पनि वृत्रले इन्द्रदेवसित युद्ध गर्ने प्रयास गऱ्यो। इन्द्रदेवले उसका पर्वतजस्ता काँधमाथि वज्रले प्रहार गरे। यति हुँदा पनि वर्षा गराउने सक्ने इन्द्रदेवका अगाडि ऊ अटेरी नै भइरह्यो। अन्त्यमा इन्द्रदेवका प्रहारले ध्वस्त भएर ऊ भूमिमा पछारियो।

नदं न भिन्नममुया शयानं मनो रुहाणा अति यन्त्यापः।
याश्चिद् वृत्रो महिना पर्यतिष्ठत्तासामहिः पत्सुतः शीर्बभूव ॥८॥

उर्लेका बाढीले नदीको किनारा नाघेझैं मनमा प्रसन्नता उराल्ने गरी वृत्रको मृत शरीर नाघेर जल बग्यो। वृत्रले आफ्ना बलले जुन जल रोकेर राखेको थियो, त्यसै जलमुनि यति बेला वृत्र मृत्युशय्यामा ढलिरहेको छ।

नीचावया अभवद् वृत्रपुत्रेन्द्रो अस्या अव वधर्जभार।
उत्तरा सूरधरः पुत्र आसीद्दानुः शये सहवत्सा न धेनुः ॥९॥

वृत्रकी आमा निहुरिएर वृत्रको संरक्षण गर्न लागिन्, इन्द्रदेवका प्रहारबाट जोगाउनका लागि उनी वृत्रमाथि पसारिइन्, त्यति हुँदा पनि इन्द्रदेवले उँधोबाट वृत्रमाथि प्रहार गरे। त्यस बेला गाईले आफ्नो बाछो थिचेझैं आमा माथि र छोरो तल परेका थिए।

अतिष्ठन्तीनामनिवेशनानां काष्ठानां मध्ये निहितं शरीरम्।
वृत्रस्य निण्यं वि चरन्त्यापो दीर्घं तम आशयदिन्द्रशत्रुः ॥१०॥

एक ठाउँमा नअडिने अविरल गतिमा रहेका जलप्रवाहका माझमा वृत्रको शरीर अदृश्य भएर लुकेको छ। ऊ चिरनिद्रामा छ, सधैं उसका माथिबाट पानी बगिरहन्छ।

दासपत्नीरहिगोपा अतिष्ठन्निरुद्धा आपः पणिनेव गावः।
अपां बिलमपिहितं यदासीद् वृत्रं जघन्वाँ अप तद्ववार ॥११॥

पणि नामका असुर कन्जुस व्यापारी जस्तै हो। पहाडले गाई वा किरण छेकेझैं त्यस पणिले जलप्रवाहलाई गतिहीन बनाउँछ। उसैका सहयोगले वृत्रले जलप्रवाह रोकेको थियो। वृत्रको वध गरेर त्यो प्रवाह इन्द्रले खोलिदिए।

अश्व्यो वारो अभवस्तदिन्द्र सृके यत्त्वा प्रत्यहन्देव एकः।
अजयो गा अजयः शूर सोममवासृजः सर्तवे सप्त सिन्धून् ॥१२॥

हे इन्द्रदेव ! वृत्र कुशल योद्धा हो। इन्द्रले वज्र प्रहार गर्दा घोडाले पुछर हल्लाएर झिंगा धपाएझैं सजिलैसित वज्रको प्रहार वृत्रले पन्छाउँदै जोगिन्थ्यो। हे महाबली इन्द्रदेव ! तिमीले लडाइँमा सोम र गाईहरू जितेपछि गङ्गा आदि सात नदीहरू बगायौ।

नास्मै विद्युन्न तन्यतुः सिषेध न यां मिहमकिरद्ध्रादुनिं च।
इन्द्रश्च यद्युयुधाते अहिश्चोतापरीभ्यो मघवा वि जिग्ये ॥१३॥

युद्धमा वृत्रले खन्याएका भीषण विद्युत, भयङ्कर मेघको गर्जन, जल र हिउँका वर्षाले पनि इन्द्रदेवलाई रोक्न सकेनन्। वृत्रका प्रचण्ड घातक प्रयोगहरू पनि निरर्थक भए। त्यस युद्धमा असुरहरूका अनेकौं प्रकारका प्रहार इन्द्रदेवले निरस्त गरेर उसलाई जिते।

अहेर्यातारं कमपश्य इन्द्र हृदि यत्ते जघ्नुषो भीरगच्छत्।
नव च यन्नवतिं च स्रवन्तीः श्येनो न भीतो अतरो रजांसि ॥१४॥

हे इन्द्रदेव ! वृत्रको वध गर्दाखेरि यदि तिमी डराएका हुँदा हौ, त कुनै अर्को दुष्ट असुर वध गर्न तम्सिने नै थिएनौ। यसै गरी उनान्सय वटा शत्रुलाई बाज पक्षीले जलप्रवाह पार गरेझैं सहजै जित्यौ।

इन्द्रो यातोऽवसितस्य राजा शमस्य च शृङ्गिणो वज्रबाहुः।
सेदु राजा क्षयति चर्षणीनामरान्न नेमिः परि ता बभूव ॥१५॥

हातमा वज्र लिएका इन्द्रदेव मानिस, पशु आदि सबै स्थावरजङ्गमको राजा हुन्। शान्त एवं क्रूर प्रकृतिका सबै प्राणीहरू उनका चारैतिर चक्रका धुराको वरिपरि गजहरू घुमेझैं घुम्ने गर्दछन्।

[सूक्त - ३३]

**ऋषि** - हिरण्यस्तूप आङ्गिरस। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

**एतायामोप गव्यन्त इन्द्रमस्माकं सु प्रमतिं वावृधाति।**
**अनामृणः कुविदादस्य रायो गवां केतं परमावर्जते नः ॥१॥**

गाई पाल्ने रहर भएका मानिसहरू इन्द्रदेवकहाँ जाऔं। अपराजेय इन्द्रदेवले हामीलाई गाईरूपी धन बढाउन असल बुद्धि दिन्छन्। उनले गाई प्राप्त गर्ने उत्तम उपाय गर्दछन्।

**उपेदहं धनदामप्रतीतं जुष्टां न श्येनो वसतिं पतामि।**
**इन्द्रं नमस्यन्नुपमेभिरर्कैर्यः स्तोतृभ्यो हव्यो अस्ति यामन् ॥२॥**

बाज पक्षी गुँडमा गएझैं हामी धनदाता इन्द्रदेवका नजिक वेगका साथ पुग्दछौं। उनलाई स्तोत्रले पूजा गर्दछौं। युद्धमा सहायता माग्दै स्तोताले बोलाउँदा अपराजेय इन्द्रदेव अविलम्ब उनीहरू भएका ठाउँमा पुग्ने गर्दछन्।

**नि सर्वसेन इषुधीँरसक्त समर्यो गा अजति यस्य वष्टि।**
**चोष्क्रूयमाण इन्द्र भूरि वामं मा पणिर्भूरस्मदधि प्रवृद्ध ॥३॥**

सबै वटा सेनाका सेनापति इन्द्रदेवले धनुमा ताँदो चढाएपछि गाई र धन जित्दछन्। हे इन्द्रदेव स्वामी ! हाम्रो धन प्राप्त गर्ने इच्छा पूरा गर। त्यसका लागि तिमी वैश्यले गरेजस्तो हामीसित व्यापार नगर।

**वधीर्हि दस्युं धनिनं घनेनँ एकश्चरन्नुपशाकेभिरिन्द्र।**
**धनोरधि विषुणक्ते व्यायन्नयज्वानः सनकाः प्रेतिमीयुः ॥४॥**

हे इन्द्रदेव ! आफ्ना प्रचण्ड वज्रका सहायताले तिमीले एक्लै नै धनवान् दस्यु वृत्रको वध गर्‍यौ। उसका अनुचरहरूले तिमीमाथि आक्रमण गरे। ती यज्ञविरोधी दानवलाई पनि तिमीले नष्ट गरिदियौ।

**परा चिच्छीर्षा ववृजुस्त इन्द्रायज्वानो यज्वभिः स्पर्धमानाः।**
**प्र यद्दिवो हरिवः स्थातरुग्र निरव्रताँ अधमो रोदस्योः ॥५॥**

हे इन्द्रदेव ! याज्ञिकहरूसित स्पर्धा गर्न आएका अयाज्ञिकहरू मुख लुकाउँदै भागे। हे अश्वमा चढेका इन्द्रदेव ! तिमी युद्धमा अटल र प्रचण्ड सामर्थ्य भएका छौ। तिमीले आकाश, अन्तरिक्ष र पृथ्वीबाट धर्महीन र व्रतहीनहरूलाई हटाइदिएका छौ।

**अयुयुत्सन्ननवद्यस्य सेनामयातयन्त क्षितयो नवग्वाः।**
**वृषायुधो न वध्रयो निरष्टाः प्रवद्भिरिन्द्राच्चितयन्त आयन् ॥६॥**

शत्रुले इन्द्रदेवका निर्दोष सेनामाथि पूरा शक्तिले प्रहार गरे पनि हारे। नपुंसकले शक्तिशाली वीरसित युद्ध गर्दा हारेजस्तै तिनीहरूको हार भयो। आफ्नो दुर्बलता स्वीकार गर्दै तिनीहरू सबै इन्द्रदेवभन्दा टाढा भागे।

**त्वमेतान्रुदतो जक्षतश्चायोधयो रजस इन्द्र पारे।**
**अवादहो दिव आ दस्युमुच्चा प्र सुन्वतः स्तुवतः शंसमावः ॥७॥**

हे इन्द्रदेव ! तिमीले रुने र हाँस्ने यी सबै शत्रुलाई युद्ध गरेर मारिदियौ। दस्यु वृत्रलाई माथि उचालेर आकाशबाट खसालीकन जलाइदियौ। तिमीले सोमयज्ञ गर्ने र प्रशंसक स्तोताहरूको रक्षा गर्‍यौ।

**चक्राणासः परीणहं पृथिव्या हिरण्येन मणिना शुम्भमानाः।**
**न हिन्वानासस्तितिरुस्त इन्द्रं परि स्पशो अदधात्सूर्येण ॥८॥**

ती शत्रुले पृथ्वीका माथिल्ला भागमा आफ्नो आधिपत्य स्थापित गरेका थिए। तिनीहरू स्वर्ण आदि रत्नले सम्पन्न पनि थिए तर इन्द्रदेवसितको युद्धमा जोगिन सकेनन्। सूर्यदेवले तिनीहरूलाई टाढा लखेटिदिए।

**परि यदिन्द्र रोदसी उभे अबुभोजीर्महिना विश्वतः सीम्।**
**अमन्यमानाँ अभि मन्यमानैर्निर्ब्रह्मभिरधमो दस्युमिन्द्र ॥९॥**

हे इन्द्रदेव ! तिमी आफ्ना सामर्थ्यले द्युलोक र भूलोकलाई चारै तिरबाट उपयोग गर्छौ। हे इन्द्रदेव ! तिमी आफ्ना अनुचरहरूका सहयोगले विरोधीमाथि विजय प्राप्त गर्छौ। तिमीले मन्त्रशक्तिद्वारा शत्रुमाथि विजय प्राप्त गर्‍यौ।

न ये दिवः पृथिव्या अन्तमापुर्न मायाभिर्धनदां पर्यभूवन्।
युजं वज्रं वृषभश्चक्र इन्द्रो निर्ज्योतिषा तमसो गा अदुक्षत् ॥१०॥

मेघरूपी वृत्रले रोकिदिएका कारणले जल द्युलोकबाट पृथ्वीमा बर्सन सकेन र जलका अभावले भूमिमा खेतीको हरियाली भएन, त्यस्ता बेलामा इन्द्रले आफ्ना चम्किला वज्रले अन्धकाररूपी मेघलाई फोरेर गाई दुहेझैं पानीको वर्षा गराए।

अनु स्वधामक्षरन्नापो अस्यावर्धत मध्य आ नाव्यानाम्।
सध्रीचीनेन मनसा तमिन्द्र ओजिष्ठेन हन्मनाहन्नभि द्यून् ॥११॥

धान, जौ आदि अन्नका लागि पानीको वर्षा भयो। त्यस बेला नौका आदिका सहायताले वृत्र अघि बढ्दै थियो। इन्द्रदेवले मनलाई एकाग्र गराउँदै आफ्ना शक्ति र साधनद्वारा थोरै समयमा नै त्यस वृत्रलाई मारिदिए।

न्याविध्यदिलीबिशस्य दृळहा वि शृङ्गिणमभिनच्छुष्णमिन्द्रः।
यावत्तरो मघवन्यावदोजो वज्रेण शत्रुमवधीः पृतन्युम् ॥१२॥

गुफारूपी किल्लामा सुतेका वृत्रका किल्लाहरू इन्द्रदेवले ध्वस्त गरे। लामा सिङ भएका त्यस शोषक वृत्रलाई उनले क्षतविक्षत गराए। हे ऐश्वर्यशाली इन्द्रदेव ! तिमीले सम्पूर्ण वेग र बलले शत्रुसेनाको विनाश गरेका थियौ।

अभि सिध्मो अजिगादस्य शत्रून्वितिग्मेन वृषभेणा पुरोऽभेत्।
सं वज्रेणासृजद्वृत्रमिन्द्रः प्र स्वां मतिमतिरच्छाशदानः ॥१३॥

इन्द्रदेवको धारिलो र शक्तिशाली वज्रले लक्ष्य बनाएर प्रहार गरेका शत्रुका किल्लाहरू सबै ध्वस्त भए। शत्रुलाई वज्रले मारेर इन्द्रदेव स्वयं ज्यादै उत्साहित भए।

आवः कुत्समिन्द्र यस्मिञ्चाकन्प्रावो युध्यन्तं वृषभं दशद्युम्।
शफच्युतो रेणुर्नक्षत द्यामुच्छ्वैत्रेयो नृषाह्याय तस्थौ ॥१४॥

हे इन्द्रदेव ! कुत्स ऋषिप्रति स्नेह भएकाले कारण तिमीले उनको रक्षा गर्‍यौ। आफ्ना शत्रुसित युद्ध गर्ने श्रेष्ठ गुणवान् दशद्यु ऋषिको पनि तिमीले रक्षा गर्‍यौ। त्यस बेला घोडाका खुरको धुलो आकाशसम्म पुगेको थियो। त्यसै बेला शत्रुका डरले पानीमा लुकिरहेको श्वैत्रेय नाम भएका मानिसको रक्षा गरेर तिमीले त्यसलाई पानीबाट बाहिर निकालेका थियौ।

आवः शमं वृषभं तुग्र्यासु क्षेत्रजेषे मघवञ्छ्वित्र्यं गाम्।
ज्योक् चिदत्र तस्थिवांसो अक्रञ्छत्रूयतामधरा वेदनाकः ॥१५॥

हे धनवान् इन्द्रदेव ! जमिन प्राप्त गर्ने इच्छाले सशक्त जलप्रवाहमा लुकेका श्वित्र्य भन्ने व्यक्तिलाई तिमीले रक्षा गर्‍यौ। त्यस पानीभित्र धेरै बेरसम्म तिमी शत्रुसित युद्ध गरेका थियौ। ती शत्रुलाई पानीमुनि मुन्ट्याएर तिमीले चर्को दुःख दियौ।

[सूक्त - ३४]

**ऋषि** - हिरण्यस्तूप आङ्गिरस। **देवता** - अश्विनीकुमार। **छन्द** - जगती त्रिष्टुप्।

त्रिश्चिन्नो अद्या भवतं नवेदसा विभुर्वां याम उत रातिरश्विना।
युवोर्हि यन्त्रं हिम्येव वाससोऽभ्यायंसेन्या भवतं मनीषिभिः ॥१॥

हे ज्ञानी अश्विनीकुमार हो ! तिमीहरू दुवै यहाँ तीन पटक आयौ। तिमीहरूको रथ पनि महान् छ र दान पनि महान् छ। हिउँदका रात र चर्को घाम लागेको दिनजस्तै तिमीहरू दुईको आपसमा नित्य सम्बन्ध छ। विद्वान्हरूका माध्यमबाट तिमीहरूलाई हामीले भेट्न पाऔँ।

त्रयः पवयो मधुवाहने रथे सोमस्य वेनामनु विश्व इद्विदुः।
त्रयः स्कम्भासः स्कभितास आरभे त्रिर्नक्तं याथस्त्रिर्वश्विना दिवा ॥२॥

मधुर सोमरस ओसार्ने रथमा वज्रजस्तै बलिया तीन वटा पाङ्ग्रा छन्। सबै मानिसले तिमीहरू सोमरस ज्यादै रुचाउँछौ भन्ने जान्दछन्। तिम्रा रथमा तीन वटा बलिया खम्बा ठडिएका छन्। हे अश्विनीकुमारहरू हो ! तिमीहरू त्यसै रथमा तीन पटक राती र तीन पटक दिउँसो यात्रा गर्दछौ।

समाने अहन्त्रिरवद्यगोहना त्रिरद्य यज्ञं मधुना मिमिक्षतम्।
त्रिर्वाजवतीरिषो अश्विना युवं दोषा अस्मभ्यमुषसश्च पिन्वतम् ॥३॥

हे दोष मेटाइदिने अश्विनीकुमारहरू हो ! आज हाम्रा यज्ञमा दिनको तीन पटक मधुर रसले सेचन गरिदेओ। बिहान, मध्याह्नमा र साँझ तीन किसिमका पुष्टिवर्धक अन्न हामीलाई प्रदान गर।

त्रिर्वर्तिर्यातं त्रिरनुव्रते जने त्रिः सुप्राव्ये त्रेधेव शिक्षतम्।
त्रिर्नान्द्यं वहतमश्विना युवं त्रिः पृक्षो अस्मे अक्षरेव पिन्वतम् ॥४॥

हे अश्विनीकुमारहरू ! हाम्रा घरमा तिमीहरू तीन पटक आओ, आफन्तलाई तीन पटक सुरक्षित गर, तीन पटक तीन वटा विशिष्ट ज्ञान देओ र सुखप्रद पदार्थ तीन पटक हामीकहाँ ल्याइदेओ। हामीलाई बलप्रदायक अन्न मनग्गे दिएर सम्पन्न गराओ।

त्रिर्नो रयिं वहतमश्विना युवं त्रिर्देवताता त्रिरुतावतं धियः।
त्रिः सौभगत्वं त्रिरुत श्रवांसि नस्त्रिष्ठं वां सूरे दुहितारुहद्रथम् ॥५॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै हाम्रा लागि तीन पटक यतातिर आओ। हाम्रा बुद्धिलाई तीन पटक देवताहरूको स्तुतिमा प्रेरित गर। हामीलाई तीन पटक सौभाग्य र तीन पटक यश प्रदान गर। तिम्रा रथमा सूर्यपुत्री उषा विराजमान छिन्।

त्रिर्नो अश्विना दिव्यानि भेषजा त्रिः पार्थिवानि त्रिरु दत्तमद्भ्यः।
ओमानं शंयोर्ममकाय सूनवे त्रिधातु शर्म वहतं शुभस्पती ॥६॥

हे शुभ कर्म पाल गर्ने र गराउने अश्विनीकुमारहरू हो ! तिमीहरूले हामीलाई तीन पटक देवलोकका, तीन पटक पृथ्वीलोकका र तीन पटक जलका औषधीहरू प्रदान गरेका छौ। तिमीहरूले हाम्रा सन्तानलाई उत्तम सुखका साथ संरक्षण दिएका छौ र तीन किसिमका धातुबाट प्राप्त हुने सुख, आरोग्य तथा ऐश्वर्य पनि प्रदान गरेका छौ।

त्रिर्नो अश्विना यजता दिवेदिवे परि त्रिधातु पृथिवीमशायतम्।
तिस्रो नासत्या रथ्या परावत आत्मेव वातः स्वसराणि गच्छतम् ॥७॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू नित्य तीन पटक यजनयोग्य छौ। पृथ्वीमा स्थापित वेदीका तीनतिरका आसनहरूमा बस। हे असत्यरहित रथामा आरूढ हुने देवता हो ! प्राणवायु र आत्माजत्तिकै भएर टाढाबाट पनि हाम्रा यज्ञमा तीन पटक आओ।

त्रिरश्विना सिन्धुभिः सप्तमातृभिस्त्रय आहावास्त्रेधा हविष्कृतम्।
तिस्रः पृथिवीरुपरि प्रवा दिवो नाकं रक्षेथे द्युभिरक्तुभिर्हितम् ॥८॥

हे अश्विनीकुमारहरू हो ! आमाजस्ता सात नदीका जलले तीन पटक पात्र भरिदिएका छन्। तीन भागमा हवि विभाजित गरिएको छ। आकाशमाथि यात्रा गर्दै तिमीहरू तीनै लोकका दिनलाई र रात्रिहरूलाई रक्षा गर्दछौ।

क्व१त्री चक्रा त्रिवृतो रथस्य क्व१त्रयो वन्धुरो ये सनीडाः।
कदा योगो वाजिनो रासभस्य येन यज्ञं नासत्योपयाथः ॥९॥

हे सत्यनिष्ठ अश्विनीकुमारहरू हो ! तिमीहरू जुन तीन वटा किनार भएका रथमा चढेर यज्ञस्थलमा पुग्दछौ, त्यसका तीन चक्र कहाँ छन् ? एउटै जगमा अडिएका तीन खम्बा कहाँ छन् ? ज्यादै हिल्लिने बलिया घोडाहरू त्यस रथमा कहिले नारेका थियौ ?

आ नासत्या गच्छतं हूयते हविर्मध्वः पिबतं मधुपेभिरासभिः।
युवोर्हि पूर्वं सवितोषसो रथमृताय चित्रं घृतवन्तमिष्यति ॥१०॥

हे सत्यशील अश्विनीकुमारहरू हो ! यहाँ हविको आहुति दिइँदै छ, आओ। मधु पान गर्ने मुखले मधुर रस पान गर। तिमीहरूका विचित्र पुष्ट रथलाई सूर्यदेवले उषा कालभन्दा पहिले नै यज्ञका लागि प्रेरित गर्नेछन्।

आ नासत्या त्रिभिरेकादशैरिह देवेभिर्यातं मधुपेयमश्विना।
प्रायुस्तारिष्टं नी रपांसि मृक्षतं सेधतं द्वेषो भवतं सचाभुवा ॥११॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै तेत्तीस देवताहरूका साथ हाम्रा यस यज्ञमा मधुपान गर्न आओ। हाम्रो आयु बढाओ र हाम्रो पाप जरैदेखि नाश गरिदेओ। हामीप्रति द्वेषको भावना समाप्त गरेर सबै कार्यमा सहायक भइदेओ।

आ नो अश्विना त्रिवृता रथेनार्वाञ्चं रयिं वहतं सुवीरम्।
शृण्वन्ता वामवसे जोहवीमि वृधे च नो भवतं वाजसातौ ॥१२॥

हे अश्विनीकुमारहरू ! तीन कुने रथमा हाम्रा लागि उत्तम धन र सामर्थ्य ओसारिदेओ। हामीले आफ्नो रक्षाका लागि गरिएको आह्वान तिमीहरू सुन। युद्धका अवसरमा हाम्रो बल वृद्धि गर्ने प्रयास गर।

[सूक्त - ३५]

ऋषि - हिरण्यस्तूप आङ्गिरस। देवता - अग्नि रात्रि सविता। छन्द - त्रिष्टुप् जगती।

**ह्वयाम्यग्निं प्रथमं स्वस्तये ह्वयामि मित्रावरुणाविहावसे।**
**ह्वयामि रात्रीं जगतो निवेशनीं ह्वयामि देवं सवितारमूतये ॥१॥**

कल्याणको कामनाले हामी सर्वप्रथम अग्निदेवको प्रार्थना गर्दछौं। आफ्नो रक्षाका लागि हामी मित्र र वरुण देवलाई बोलाउँछौं। जगत्‌लाई विश्राम दिने रात्रि र सूर्यदेवलाई हामी आफ्नो रक्षाका लागि आह्वान गर्दछौं।

**आ कृष्णेन रजसा वर्तमानो निवेशयन्नमृतं मर्त्यं च।**
**हिरण्ययेन सविता रथेना देवो याति भुवनानि पश्यन् ॥२॥**

गहिरो अन्धकारमा डुबेका आकाशमा भ्रमण गर्दै देवता र मानिसहरूका यज्ञ आदि श्रेष्ठ कर्महरू सवितादेवले व्यवस्थित गर्दछन्। उनी सबै लोकहरूलाई हेर्दै स्वर्णिम रथबाट आउँछन्।

**याति देवः प्रवता यात्युद्वता याति शुभ्राभ्यां यजतो हरिभ्याम्।**
**आ देवो याति सविता परावतोऽप विश्वा दुरिता बाधमानः ॥३॥**

स्तुति गर्न योग्य सवितादेव उकालो चढ्दै र ओरालो झर्दै निरन्तर गतिशील रहन्छन्। अन्धकाररूपी पाप नष्ट गर्दै ती सवितादेव सेता घोडा नारिएका रथमा चढेर अति टाढाबाट यस यज्ञशालामा आउनेछन्।

**अभीवृतं कृशनैर्विश्वरूपं हिरण्यशम्यं यजतो बृहन्तम्।**
**आस्थाद्रथं सविता चित्रभानुः कृष्णा रजांसि तविषीं दधानः ॥४॥**

निरन्तर यात्रा गरिरहने, विभिन्न रूपहरूले सुशोभित, पूजनीय, अद्‌भुत रश्मियुक्त सवितादेव बाक्लो अन्धकार नष्ट गर्न सक्ने प्रचण्ड सामर्थ्य भएका छन्। उनी स्वर्णिम रश्मिले युक्त रथमा चढेर आउनेछन्।

**वि जनाञ्छ्यावाः शितिपादो अख्यन्रथं हिरण्यप्रउगं वहन्तः।**
**शश्वद्विशः सवितुर्दैव्यस्योपस्थे विश्वा भुवनानि तस्थुः ॥५॥**

सूर्यदेवका घोडाहरू सेता खुट्टा भएका छन्, तिनीहरू सुनौलो रथ तान्दछन् र संसारलाई प्रकाश दिन्छन्। सबै लोकका प्राणीहरू सधैंभरि सवितादेवमै आश्रित हुन्छन्।

**तिस्रो द्यावः सवितुर्द्वा उपस्थाँ एका यमस्य भुवने विराषाट्।**
**आणिं न रथ्यममृताधि तस्थुरिह ब्रवीतु य उ तच्चिकेतत् ॥६॥**

तीन लोकमध्ये द्यावा र पृथिवी यी दुई लोक सूर्यदेवका नजिक रहेर प्रकाशित छन्। एउटा अन्तरिक्ष लोक यमदेवको विशिष्ट द्वारका रूपमा रहेको छ। रथका धुरामा हुने किलाजस्तै सूर्यदेवमा नै सबै वटा लोकहरू अडिएका छन्। यो रहस्य जसले बुझेको छ त्यसले अरूलाई बुझाइदियोस्।

**वि सुपर्णो अन्तरिक्षाण्यख्यद्गभीरवेपा असुरः सुनीथः।**
**क्वेदानीं सूर्यः कश्चिकेत कतमां द्यां रश्मिरस्या ततान ॥७॥**

गम्भीर, गतियुक्त, प्राणरूप, उत्तम प्रेरक, सुन्दर, दीप्तिमान् सूर्यदेव अन्तरिक्ष आदि लोकहरूलाई प्रकाशित गर्दछन्। यी सूर्यदेव कहीं पनि कहिल्यै बस्तैनन् र। उनको रश्मिहरू कुन आकाशमा होला ? यसको रहस्य कसले जानेको होला ?

**अष्टौ व्यख्यत्ककुभः पृथिव्यास्त्री धन्व योजना सप्त सिन्धून्।**
**हिरण्याक्षः सविता देव आगाद्दधद्रत्ना दाशुषे वार्याणि ॥८॥**

सुनौला दृष्टि हुने सवितादेवले पृथ्वीका आठै दिशा, त्यस्तै आठ दिशा हुने तीन वटै लोक र ती तीन लोकमा भएका सात सागर आदिलाई उज्यालो पारुन्। त्यसपछि त्यहाँ रहने गरेका हविदाताहरूले मन पराउने विभूति लिएर आऊन्।

**हिरण्यपाणिः सविता विचर्षणिरुभे द्यावापृथिवी अन्तरीयते।**
**अपामीवां बाधते वेति सूर्यमभि कृष्णेन रजसा द्यामृणोति ॥९॥**

सुनौला किरणरूपी हात भएका, विलक्षण द्रष्टाका रूपमा सम्मानित सवितादेव द्यावा र पृथिवीका बीचमा भ्रमण गर्दछन्। उनी रोग आदि बाधा नष्ट गरेर अन्धकार नाश गर्ने दीप्तिले आकाशलाई उज्यालो पार्दछन्।

हिरण्यहस्तो असुरः सुनीथः सुमृडीकः स्ववाँ यात्वर्वाङ्।
अपसेधन्रक्षसो यातुधानानस्थाद्देवः प्रतिदोषं गृणानः ॥१०॥

सुनौला किरणरूपी हात भएका, प्राणदाता, कल्याणकारक, उत्तम सुखदायक, दिव्य गुणले सम्पन्न सूर्यदेवले जुनसुकै मानिसका सबै दोष नष्ट गर्दछन्। त्यसै गरी उनी असुर र दुष्कर्मी नष्ट गर्दै उदाउँछन्।

ये ते पन्थाः सवितः पूर्व्यासोऽरेणवः सुकृता अन्तरिक्षे।
तेभिर्नो अद्य पथिभिः सुगेभी रक्ष च नो अधि च ब्रूहि देव ॥११॥

हे सवितादेव ! उहिलेदेखि नै तिम्रो मार्ग धुलोरहित रूपमा आकाशमा निश्चित छ। त्यसै मार्गबाट आज आएर तिमी हाम्रो रक्षा गर र हामीलाई देवत्व प्राप्त गराऊ।

[सूक्त - ३६]

ऋषि - कण्व घोर। देवता - अग्नि यूप। छन्द - बार्हत प्रगाथ बृहती।

प्र वो यह्वं पुरूणां विशां देवयतीनाम्।
अग्निं सूक्तेभिर्वचोभिरीमहे यं सीमिदन्य ईडते ॥१॥

हामी ऋत्विक्हरू आफ्ना साधारण वाक्यले व्यक्तिमा देवत्व विकास गर्ने महानताको वर्णन गर्दछौं। त्यस महानताको वर्णन ऋषिहरूले राम्रोसित गरेका छन्।

जनासो अग्निं दधिरे सहोवृधं हविष्मन्तो विधेम ते।
स त्वं नो अद्य सुमना इहाविता भवा वाजेषु सन्त्य ॥२॥

मानिसहरूले बलवर्धक अग्निदेवलाई वरण गरे। हामी उनलाई हविले प्रवृद्ध गराउँछौं। अन्नदाता हे अग्निदेव ! आज तिमी प्रसन्न मनले हाम्रो रक्षा गर।

प्र त्वा दूतं वृणीमहे होतारं विश्ववेदसम्।
महस्ते सतो वि चरन्त्यर्चयो दिवि स्पृशन्ति भानवः ॥३॥

देवताका दूत, होताका रूप, सर्वज्ञ हे अग्निदेव ! तिमीलाई हामी वरण गर्दछौं। तिमी महान् र सत्यरूप हौ। तिम्रा ज्वालाबाट फैलँदो प्रकाश आकाशसम्म पुग्दछ।

देवासस्त्वा वरुणो मित्रो अर्यमा सं दूतं प्रत्नमिन्धते।
विश्वं सो अग्ने जयति त्वया धनं यस्ते ददाश मर्त्यः ॥४॥

हे अग्निदेव ! मित्र, वरुण र अर्यमा यी तीन देवताहरू तिमीलाई पुराना देवदूतका रूपमा प्रदीप्त गराउँछन्। जुन याजकले तिम्रा निम्ति हवि समर्पित गर्दछन् उनीहरू तिम्रा कृपाले सबै खालका धन प्राप्त गर्दछन्।

मन्द्रो होता गृहपतिरग्ने दूतो विशामसि।
त्वे विश्वा संगतानि व्रता ध्रुवा यानि देवा अकृण्वत ॥५॥

हे अग्निदेव ! तिमी आनन्द दिने, प्रजापालक, होतारूप, गृहस्वामी र देवदूत हौ। अरू देवताहरूले सम्पन्न गर्ने शुभकर्महरू पनि तिम्रै कारणले पूरा हुन्छन्।

त्वे इदग्ने सुभगे यविष्ठ्य विश्वमा हूयते हविः।
स त्वं नो अद्य सुमना उतापरं यक्षि देवान्त्सुवीर्या ॥६॥

हे चिरयुवा अग्निदेव ! सबै हवि तिमीलाई नै अर्पण गरिएको छ। यो तिम्रो उत्तम सौभाग्य हो। हाम्रा लागि तिमी प्रसन्न होऊ र वर्तमान तथा भविष्यका लागि समेत शक्तिशाली देवताहरूलाई यजन गर।

तं घेमित्था नमस्विन उप स्वराजमासते।
होत्राभिरग्निं मनुषः समिन्धते तितिर्वांसो अति स्रिधः ॥७॥

विनम्र स्वभावका उपासकहरू स्वयं प्रकट भएका अग्निदेवको उपासना गर्दछन्। शत्रुलाई जित्न खोज्ने मानिसहरू हवनसामग्री र स्तुतिद्वारा अग्नि प्रदीप्त गर्दछन्।

घ्नन्तो वृत्रमतरन्रोदसी अप उरु क्षयाय चक्रिरे।
भुवत्कण्वे वृषा द्युम्न्याहुतः क्रन्ददश्वो गविष्टिषु ॥८॥

देवताहरूले प्रहार गरेर वृत्रको वध गरे। प्राणीको निवासका लागि उनीहरूले द्यावा, पृथिवी र अन्तरिक्षलाई ज्यादै विस्तृत बनाए। गाई, अश्व आदिको कामना गरेर कण्वले अग्नि प्रकट गरे। त्यसपछि उनले आहुति प्रदान गरेर अग्निलाई बलिष्ठ बनाए।

सं सीदस्व महाँ असि शोचस्व देववीतमः।
वि धूममग्ने अरुषं मियेध्य सृज प्रशस्त दर्शतम् ॥९॥

हे यज्ञीय गुणका कारण प्रशंसनीय अग्निदेव ! तिमी देवताका प्रियपात्र र महान् गुणका प्रेरक हौ। यहाँ उचित स्थानमा बस र प्रज्वलित होऊ। घिउका आहुतिले दर्शनयोग्य तेजस्वी भएर धुवाँको बाक्लो मुस्लो छोड।

यं त्वा देवासो मनवे दधुरिह यजिष्ठं हव्यवाहन।
यं कण्वो मेध्यातिथिर्धनस्पृतं यं वृषा यमुपस्तुतः ॥१०॥

हे हवि ओसार्ने अग्निदेव ! तिमी सम्पूर्ण देवताहरूले पूजा गर्न योग्य छौ। तिमीलाई सबै मानिसको हितका लागि यस यज्ञमा धारण गरियो। तिमी धनले सन्तुष्ट गराउँछौ। त्यसै कारण तिमीलाई मेध्यातिथि, कण्व, वृषा र उपस्तुतले यज्ञमा वरण गरे।

यमग्निं मेध्यातिथिः कण्व ईध ऋतादधि।
तस्य प्रेषो दीदियुस्तमिमा ऋचस्तमग्निं वर्धयामसि ॥११॥

जुन अग्निदेवलाई मेध्यातिथि र कण्वले सत्यरूप कर्मबाट प्रकट गराए, ती अग्निदेव अति नै देदीप्यमान छन्। उनै अग्निले हाम्रा ऋचाहरूलाई पनि प्रशस्त गराउँछन्। हामी पनि तिनै अग्निदेवलाई संवर्द्धित गर्दछौँ।

रायस्पूर्धि स्वधावोऽस्ति हि तेऽग्ने देवेष्वाप्यम्।
त्वं वाजस्य श्रुत्यस्य राजसि स नो मृड महाँ असि ॥१२॥

हे अन्नवान् अग्निदेव ! हामीलाई अन्न आदि सम्पदाले भरिपूर्ण गराऊ। तिमी देवताका मित्र र प्रशंसनीय बलका स्वामी हौ। तिमी महान् छौ, हामीलाई सुखी बनाऊ।

ऊर्ध्व ऊ षु ण ऊतये तिष्ठा देवो न सविता।
ऊर्ध्वो वाजस्य सनिता यदञ्जिभिर्वाघद्भिर्विह्वयामहे ॥१३॥

हे काठमा रहने अग्निदेव ! सर्वोत्पादक सवितादेवले अन्तरिक्षबाट हामी सबैको रक्षा गर्दछन्। त्यसै गरी तिमी पनि आफ्नो ज्वाला माथितिर फिँजाउँदै अन्न आदि पोषक पदार्थ दिएर हाम्रो जीवनलाई रक्षा गर। मन्त्रोच्चारणपूर्वक हवि प्रदान गर्ने याजकहरूले तिम्रा उत्कृष्ट स्वरूपको आह्वान गरेका छन्।

ऊर्ध्वो नः पाह्यंहसो नि केतुना विश्वं समत्रिणं दह।
कृधी न ऊर्ध्वाञ्चरथाय जीवसे विदा देवेषु नो दुवः ॥१४॥

हे काठका खम्बामा रहेका अग्निदेव ! तिमी उकालो चढेझैँ माथितिर ज्वाला फैलाएर आफ्ना श्रेष्ठ ज्ञानले पापबाट हामीलाई जोगाऊ, मानवताका शत्रुलाई डढाऊ, जीवनमा प्रगतिका लागि हामीलाई उकालो लगाऊ र हाम्रो प्रार्थना देवताहरूसमक्ष पुऱ्याऊ।

पाहि नो अग्ने रक्षसः पाहि धूर्तेरराव्णः।
पाहि रीषत उत वा जिघांसतो बृहद्भानो यविष्ठ्य ॥१५॥

हे महान् दीप्तिस्वरूप, चिरयुवा अग्निदेव ! हामीलाई राक्षसहरूबाट तिमी रक्षा गर, कन्जुस तथा धूर्तबाट सुरक्षित बनाऊ र हिंसा एवं जघन्य अपराधबाट जोगाऊ।

घनेव विष्वग्वि जह्यराव्णस्तपुर्जम्भ यो अस्मध्रुक्।
यो मर्त्यः शिशीते अत्यक्तुभिर्मा नः स रिपुरीशत ॥१६॥

हे आफ्ना तापले रोग आदि कष्ट निर्मूल पार्ने अग्निदेव ! तिमी कृपणलाई गदाले हानेर विनाश गर। डाहा गर्ने र रातभरि जागा बसेर हाम्रो खेदो गर्न खोज्ने शत्रुले हामीमाथि अधिकार गर्न नपाऊन्।

अग्निर्वव्ने सुवीर्यमग्निः कण्वाय सौभगम्।
अग्निः प्रावन्मित्रोत मेध्यातिथिमग्निः साता उपस्तुतम् ॥१७॥

हे उत्तम पराक्रमी अग्निदेव ! जसले कण्वलाई सौभाग्य प्रदान गरे तिनैले हाम्रा मित्रहरूको रक्षा पनि गरे। उनैले मेध्यातिथि र उपस्तुतको पनि रक्षा गरेका हुन्।

अग्निना तुर्वशं यदुं परावत उग्रादेवं हवामहे।
अग्निर्नयन्नववास्त्वं बृहद्रथं तुर्वीतिं दस्यवे सहः ॥१८॥

अग्निदेवसँगै हामी तुर्वश, यदु र उग्रदेवलाई बोलाउँछौँ। नवास्तुत, बृहद्रथ र तुर्वीतिलाई लिएर अग्निदेव आउन्। उनीहरूसँगै हामी दुष्टका विरोधमा सङ्घर्ष गर्न सक्छौँ।

नि त्वामग्ने मनुर्दधे ज्योतिर्जनाय शश्वते।
दीदेथ कण्व ऋतजात उक्षितो यं नमस्यन्ति कृष्टयः ॥१९॥

हे अग्निदेव ! विचारवान् व्यक्तिले तिमीलाई वरण गर्दछन्। अनादि कालदेखि नै मानव जातिका लागि तिम्रो ज्योति प्रकाशित छ। तिम्रो प्रकाश आश्रमका ज्ञानवान् ऋषिहरूमा उत्पन्न हुने गर्दछ। यज्ञमा नै तिम्रो प्रज्वलित रूप प्रकट हुन्छ। त्यस वेला सबै मानिसहरू तिमीलाई नमस्कार गर्दछन्।

त्वेषासो अग्नेरमवन्तो अर्चयो भीमासो न प्रतीतये।
रक्षस्विनः सदमिद्यातुमावतो विश्वं समत्रिणं दह ॥२०॥

अग्निदेवका ज्वालाहरू प्रदीप्त भएर अत्यन्त बलशाली र प्रचण्ड भएका छन्। कसैले तीं ज्वालाको सामना गर्न सक्दैन। हे अग्निदेव ! तिमी समस्त राक्षस, आततायी र मानवताका शत्रुहरूलाई नष्ट गरिदेऊ।

[सूक्त - ३७]

ऋषि - कण्व घौर। देवता - मरुद्गण। छन्द - गायत्री।

क्रीळं वः शर्धो मारुतमनर्वाणं रथेशुभम्। कण्वा अभि प्र गायत ॥१॥

हे कण्व गोत्रीय ऋषिहरू ! क्रीडा गर्न रुचाउने, बलसम्पन्न, अहिंस्रक वृत्तिका मरुत्गण रथमा विराजमान छन्। तिमीहरू उनीहरूका लागि स्तुतिगान गर।

ये पृषतीभिर्ऋष्टिभिः साकं वाशीभिरञ्जिभिः। अजायन्त स्वभानवः ॥२॥

यी मरुत्गण आफ्नै प्रकाशले युक्त छिर्बिरे मृगलाई वाहन बनाएर गहनाले सजिएर गर्जना गर्दै प्रकट भएका छन्।

इहेव शृण्व एषां कशा हस्तेषु यद्वदान्। नि यामञ्चित्रमृञ्जते ॥३॥

मरुत्गणका हातमा रहेका चाबुकबाट आउने ध्वनि जस्ता किसिमले निस्कँदै छ, त्यस्तै रूपमा हामी सुन्दै छौं। त्यस ध्वनिले लडाईंमा असामान्य शक्ति प्रदर्शित गर्दछ।

प्र वः शर्धाय घृष्वये त्वेषद्युम्नाय शुष्मिणे। देवत्तं ब्रह्म गायत ॥४॥

हे याजकहरू हो ! बल बढाउने, शत्रु नाश गर्ने, दीप्तिमान् मरुत्गणको सामर्थ्य र यशका विषयमा तिमीहरू आफ्ना मन्त्रले विशिष्ट किसिमको गुणगान गर।

प्र शंसा गोष्वघ्न्यं क्रीळं यच्छर्धो मारुतम्। जम्भे रसस्य वावृधे ॥५॥

हे याजकहरू हो ! मरुतहरू किरणद्वारा सञ्चरित दिव्य रस पर्याप्त सेवन गरेर बलिष्ठ भएका छन्। तिनै मरुतहरूका अविनाशी बलको प्रशंसा गर।

को वो वर्षिष्ठ आ नरो दिवश्च ग्मश्च धूतयः। यत्सीमन्तं न धूनुथ ॥६॥

द्युलोक र भूलोकलाई कम्पित गराउने हे मरुतहरू हो ! रुखका हाँगाबिँगा हल्लाएझैं जसले सधैं शत्रुहरूलाई हप्काउँछौ, त्यस्ता तिमीहरूमध्ये वरिष्ठ को हो ?

नि वो यामाय मानुषो दध्र उग्राय मन्यवे। जिहीत पर्वतो गिरिः ॥७॥

हे मरुत्गण ! तिमीहरूका प्रचण्ड सङ्घर्षका आवेशबाट डराएका मानिस सहारा खोज्दै छन्। किनभने तिमीहरू विशाल पर्वत र टाकुराहरू पनि कँपाइदिन्छौ।

येषामज्मेषु पृथिवी जुजुर्वा इव विश्पतिः। भिया यामेषु रेजते ॥८॥

मरुत्गणका आक्रमणकारी बलका कारण जराजीर्ण तथा भयभीत राजाझैं पृथ्वी प्रकम्पित हुने गर्दछ।

स्थिरं हि जानमेषां वयो मातुर्निरेतवे। यत्सीमनु द्विता शवः ॥९॥

वीर मरुतहरूको मातृभूमि आकाश हो, त्यो स्थिर छ। उनीहरू मातृभूमिबाट पक्षीले वेग हानेजस्तै निर्बाध रूपमा यात्रा गर्दछन्। त्यस वेला उनीहरूको बल दोब्बर भएर व्याप्त हुने गर्दछ।

उदु त्ये सूनवो गिरः काष्ठा अज्मेष्वत्नत। वाश्रा अभिज्ञु यातवे ॥१०॥

शब्द नाद गर्ने मरुत्गणले यज्ञका लागि जल बगाए। त्रगिरहेको पानी खान गाईहरू कराउँदै आउँछन्। ती गाईहरू घुँडासम्म पानीमा पस्न बाध्य हुन्छन्।

त्यं चिद्घा दीर्घं पृथुं मिहो नपातममृध्रम्। प्र च्यावयन्ति यामभिः ॥११॥

भेदन गर्न नसकिने गरी विशाल र व्यापक तर जल वर्षा नगर्ने मेघहरूलाई पनि वीर मरुत्गण आफ्नो तेज गतिले उडाएर लैजान्छन्।

मरुतो यद्ध वो बलं जनाँ अचुच्यवीतन। गिरीँ रचुच्यवीतन ॥१२॥
हे मरुत्‌हरू हो ! तिमीहरू आफ्ना बलले मानिसलाई विचलित गराउँछौ। तिमीहरू पर्वतलाई पनि डगाउन सक्दछौ।

यद्ध यान्ति मरुतः सं ह ब्रुवतेऽध्वन्ना। शृणोति कश्चिदेषाम् ॥१३॥
जुन बेला मरुत्‌गण यात्रा गर्दछन्, त्यस बेला उनीहरू बाटोका बीचमा परस्पर कुराकानी गर्न लाग्दछन्। उनीहरूको शब्द कसले पो नसुन्ला र ?

प्र यात शीभमाशुभिः सन्ति कण्वेषु वो दुवः। तत्रो षु मादयाध्वै ॥१४॥
हे मरुत्‌हरू ! तिमीहरू तीव्र वेग भएका वाहनमा चाँडै आओ। कण्व वंशीय ऋषिहरू तिमीहरूको सत्कारका लागि उपस्थित छन्। त्यहाँ तिमीहरूलाई उत्साहका साथ तृप्ति प्राप्त होस्।

अस्ति हि ष्मा मदाय वः स्मसि ष्मा वयमेषाम्। विश्वं चिदायुर्जीवसे ॥१५॥
हे मरुत्‌गण ! तिमीहरूलाई प्रसन्न गराउनका लागि हवि द्रव्य तयार छ। पूरा आयुभरि नै सुखको जीवन बिताउन पाऔँ भनेर हामी तिमीहरूलाई स्मरण गर्दछौँ।

[सूक्त - ३८]

ऋषि - कण्व घौर। देवता - मरुद्‌गण। छन्द - गायत्री।

कद्ध नूनं कधप्रियः पिता पुत्रं न हस्तयोः। दधिध्वे वृक्तबर्हिषः ॥१॥
हे स्तुतिप्रिय मरुत्‌गण ! तिमीहरू कुशका आसनमा विराजमान होओ। पिताले स्नेहपूर्वक पुत्रलाई काखमा लिएझैं हामीलाई तिमीहरू कहिले बोक्दछौ ?

क्व नूनं कद्वो अर्थं गन्ता दिवो न पृथिव्याः। क्व वो गावो न रण्यन्ति ॥२॥
हे मरुत्‌गण ! तिमीहरू कहाँ छौ ? कुन उद्देश्यले तिमीहरू द्युलोकमा यात्रा गर्दछौ ? पृथ्वीमा किन घुम्दैनौ ? तिमीहरूलाई नदेख्दा तिमीहरूका गाईं किन कराउँदैनन् ?

क्व वः सुम्ना नव्यांसि मरुतः क्व सुविता। क्वोऽविश्वानि सौभगा ॥३॥
हे मरुत्‌गण ! तिमीहरूका नयाँ संरक्षण साधन कहाँ छन् ? तिमीहरूका सुख ऐश्वर्यका साधन कहाँ छन् ? तिमीहरूका सौभाग्यप्रद साधन कहाँ छन् ? तिमीहरू आफ्ना सबै वैभवका साथ यस यज्ञमा आओ।

यद्यूयं पृश्निमातरो मर्तासः स्यातन। स्तोता वो अमृतः स्यात् ॥४॥
हे मातृभूमिको सेवा गर्ने आकाशपुत्र मरुत्‌हरू हो ! तिमीहरू मरणशील प्राणीजस्तै छौ, तर तिमीहरूको स्तुति गर्नेहरूले अमरता प्राप्त गर्दछन्।

मा वो मृगो न यवसे जरिता भूदजोष्य पथा यमस्य गादुप ॥५॥
जसरी मृगका लागि घाँस अखाद्य मानिँदैन, उसै गरी तिम्रो स्तुति गर्नेहरू तिम्रा लागि अप्रिय नहोऊन्। तिमीहरूको स्तुति गर्नेहरूले यमलोकको मार्गमा जानु नपरोस्।

मो षु णः परापरा निर्ऋतिर्दुर्हणा वधीत्। पदीष्ट तृष्णया सह ॥६॥
अति बलिया पापवृत्ति हामीभित्र नबढून्। पापवृत्तिले हाम्रो दुर्दशा र विनाश नगरुन्। तिर्खा मेटाउन नपाएर पापवृत्तिकै विनाश होस्।

सत्यं त्वेषा अमवन्तो धन्वञ्चिदा रुद्रियासः। मिहं कृण्वन्त्यवाताम् ॥७॥
कान्तिमान, बलिष्ठ रुद्रदेवका पुत्र यी मरुत्‌गणले मरुभूमिमा पनि वर्षा गराउँछन् भन्ने कुरो सत्य हो।

वाश्रेव विद्युन्मिमाति वत्सं न माता सिषक्ति। यदेषां वृष्टिरसर्जि ॥८॥
मरुत्‌गणले वर्षाको सृजन गरेका बेला बिजुली चम्कन्छ र गड्‌गडाउँदै बर्सने पानीले धर्तीमा सेचन गर्छ। त्यस बेला निस्केको शब्द बाछालाई दुध चुसाउन लैनो गाई कराएझैं सुनिन्छ।

दिवा चित्तमः कृण्वन्ति पर्जन्येनोदवाहेन। यत्पृथिवीं व्युन्दन्ति ॥९॥
मरुत्‌गणले जल प्रवाह गर्ने मेघद्वारा दिउँसै अँध्यारो बनाइदिन्छन् र त्यसै बेला वर्षाले भूमि भिज्दछ।

अध स्वनान्मरुतां विश्वमा सद्म पार्थिवम्। अरेजन्त प्र मानुषाः ॥१०॥
मरुत्‌हरूको गर्जनाले जमिनको तल्लो भागमा रहेका सबै ठाउँहरू काँप्दछन्। त्यस कम्पनबाट सम्पूर्ण मानिसहरू पनि प्रभावित हुन्छन्।

मरुतो वीडुपाणिभिश्चित्रा रोधस्वतीरनु। यातेमखिद्रयामभिः ॥११॥

हे मरुत्गण ! तिमीहरू बलशाली बाहु भएका छौ। अविच्छिन्न वेग र गति लिएर सफा नदीतर्फ जाओ।

स्थिरा वः सन्तु नेमयो रथा अश्वास एषाम्। सुसंस्कृता अभीशवः ॥१२॥

हे मरुत्गण ! तिमीहरूको रथ बलिया घोडा, गतिलो धुरा र छरितो लगामले मनग्गे सहाउँदो होस्।

अच्छा वदा तना गिरा जरायै ब्रह्मणस्पतिम्। अग्निं मित्रं न दर्शतम् ॥१३॥

हे याजकहरू हो ! असल मित्रजस्ता, ज्ञानका अधिपति अग्निदेवलाई स्तुतियुक्त वाणीले तिमीहरू प्रशंसा गर।

मिमीहि श्लोकमास्ये पर्जन्य इव ततनः। गाय गायत्रमुक्थ्यम् ॥१४॥

हे याजकहरु हो ! आफैंले श्लोक रचना गरेर मेघको ध्वनिजस्तै ठूलो स्वरमा त्यसलाई तिमीहरू प्रचार गर। गायत्री छन्दमा काव्य रचना गरेर गाउने गर।

वन्दस्व मारुतं गणं त्वेषं पनस्युमर्किणम्। अस्मे वृद्धा असन्निह ॥१५॥

हे ऋत्विक्हरू हो ! कान्तियुक्त, स्तुत्य, अर्चनयोग्य मरुत्गणलाई तिमीहरू अभिवादन गर। उनीहरूको बास हाम्रा नजिकै यसै ठाउँमा होस्।

[सूक्त - ३९]

ऋषि – कण्व घौर। देवता – मरुद्‌गण। छन्द – बार्हत प्रगाथ।

प्र यदित्था परावतः शोचिर्न मानमस्यथ।
कस्य क्रत्वा मरुतः कस्य वर्पसा कं याथ कं ह धूतयः ॥१॥

हे कम्पायमान गराउने मरुत्गण ! तिमीहरू टाढैबाट यहाँ आफ्नो बल प्रदर्शन गर्दछौ। त्यसपछि तिमीहरू कसका यज्ञमा जान्छौ ? कुन उद्देश्यले तिमीहरू त्यहाँ जान लागेका हौ ? त्यस बेलामा तिमीहरूको लक्ष्य के हुन्छ ?

स्थिरा वः सन्त्वायुधा पराणुदे वीडु उत प्रतिष्कभे।
युष्माकमस्तु तविषी पनीयसी मा मर्त्यस्य मायिनः ॥२॥

तिमीहरूका हतियार शत्रुलाई लखेट्नका लागि प्रयोग होऊन्। आफ्ना दृढ शक्तिले शत्रुहरूको प्रतिकार गर। तिमीहरूको शक्ति प्रशंसनीय रहोस्। बहुरूपी मानिसलाई अघि नबढाओ।

परा ह यत्स्थिरं हथ नरो वर्तयथा गुरु।
वि याथन वनिनः पृथिव्या व्याशाः पर्वतानाम् ॥३॥

हे मरुत्गण ! तिमीहरू स्थिर वृक्षहरू ढलाउँदै, बलिया चट्टानलाई थर्काउँदै र भुईंको वन लतार्दै पर्वतबाट कट्ने गर्दछौ।

नहि वः शत्रुर्विविदे अधि द्यवि न भूम्यां रिशादसः।
युष्माकमस्तु तविषी तना युजा रुद्रासो नू चिदाधृषे ॥४॥

हे शत्रुनाशक मरुत्गण ! द्युलोक र पृथ्वीलोकमा तिमीहरूका शत्रुको अस्तित्व बाँकी रहेको छैन। हे रुद्रका पुत्रहरू हो ! शत्रुलाई क्षतविक्षत गर्नका लागि तिमीहरू सबै मिलेर आफ्नो शक्ति व्यापक गराओ।

प्र वेपयन्ति पर्वतान्वि विञ्चन्ति वनस्पतीन्।
प्रो आरत मरुतो दुर्मदा इव देवासः सर्वया विशा ॥५॥

हे मरुत्गण ! मदिराले मातेको मानिस काँप्रेजस्तै पारेर तिमीहरू पर्वतलाई कपाउँछौ र रुखहरू उखेलेर फ्याँक्दछौ, त्यसैले तिमीहरू प्रजाहरूका अगाडि उन्नति गर्दै जाओ।

उपो रथेषु पृषतीरयुग्ध्वं प्रष्टिर्वहति रोहितः।
आ वो यामाय पृथिवी चिदश्रोदबीभयन्त मानुषाः ॥६॥

हे मरुत्गण ! तिमीहरूको रथ रङ्गीबिरङ्गी चिह्न भएका पशुले हिँडाउँछन्। राता रङ्गका घोडाले तिमीहरूकै रथ तान्दछन्। तिमीहरूका हिँड्दा आउने शब्द भूमिले सुन्छ, मानिसहरू त्यस ध्वनिले डराउँछन्।

आ वो मक्षू तनाय कं रुद्रा अवो वृणीमहे।
गन्ता नूनं नोऽवसा यथा पुरेत्था कण्वाय बिभ्युषे ॥७॥
हे रुद्रपुत्र मरुत्गण ! आफ्ना सन्तानको रक्षा गर्नका लागि हामी तिमीहरूलाई स्तुति गर्दछौं। उहिलेउहिले कण्व डराउँदा तिनको रक्षा गर्नका लागि उनीतिर तिमीहरू चाँडै जान्थ्यौ। त्यसै गरी यति बेला हाम्रो रक्षा गर्नका लागि पनि चाँडै आइदेओ।

युष्मेषितो मरुतो मर्त्येषित आ यो नो अभ्व ईषते।
वि तं युयोत शवसा व्योजसा वि युष्माकाभिरूतिभिः ॥८॥
हे मरुत्गण ! तिमीहरू वा अन्य कुनै मानिसबाट प्रेरित शत्रु हामीमाथि हक जमाउन आयो भने तिमीहरू आफ्नो बल, तेज र रक्षणसाधनले त्यसलाई टाढा हटाइदेओ।

असामि हि प्रयज्यवः कण्वं दद प्रचेतसः।
असामिभिर्मरुत आ न ऊतिभिर्गन्ता वृष्टिं न विद्युतः ॥९॥
हे विशिष्ट पूज्य र विशिष्ट ज्ञाता मरुत्गण ! कण्वलाई तिमीहरूले सम्पूर्ण किसिमले आश्रय दिएका थियौ। त्यस बेला बिजुली चम्केको थियो र वर्षाको पानी वेगले परेको थियो। त्यस्तै बिजुली र पानीका साथ सम्पूर्ण साधन लिई हामीकहाँ आओ।

असाम्योजो बिभृथा सुदानवोऽसामि धूतयः शवः।
ऋषिद्विषे मरुतः परिमन्यव इषुं न सृजत द्विषम् ॥१०॥
हे उत्तम दानशील मरुत्गण ! सम्पूर्ण किसिमको पराक्रम र बल तिमीहरूसँग छ। हे शत्रु थर्काउने मरुत्गण ! ऋषिहरूप्रति द्वेष गर्ने शत्रुलाई नष्ट गर्ने शत्रुघातक बाण तिमीहरू तयार गर।

[सूक्त - ४०]

**ऋषि** - कण्व घौर। **देवता** - ब्रह्मणस्पति। **छन्द** - बार्हत प्रगाथ।

उत्तिष्ठ ब्रह्मणस्पते देवयन्तस्त्वेमहे।
उप प्र यन्तु मरुतः सुदानव इन्द्र प्राशूर्भवा सचा ॥१॥
हे ब्रह्मणस्पति ! तिमी उठ, देवताहरूलाई भेट्न चाहने हामी तिम्रो स्तुति गर्दछौं। हितकारी मरुत्गण हामीकहाँ आऊन्। हे इन्द्रदेव ! तिमी ब्रह्मणस्पतिसँग सोमपान गर।

त्वामिद्धि सहसस्पुत्र मर्त्य उपब्रूते धने हिते।
सुवीर्यं मरुत आ स्वश्व्यं दधीत यो व आचके ॥२॥
हे साहसी कार्यका लागि प्रख्यात ब्रह्मणस्पति ! युद्धमा मानिसहरू तिमीलाई गुहार्छन्। हे मरुत्गण ! धनको इच्छा गर्ने जुन मानिसले ब्रह्मणस्पतिका साथै तिम्रो पनि स्तुति गर्छन् तिनीहरू उत्तम अश्वसहित श्रेष्ठ पराक्रम र वैभव पाएर सम्पन्न होऊन्।

प्रैतु ब्रह्मणस्पतिः प्र देव्येतु सूनृता।
अच्छा वीरं नर्यं पङ्क्तिराधसं देवा यज्ञं नयन्तु नः ॥३॥
ब्रह्मणस्पति हाम्रो अनुकूल भएर यज्ञमा आइदिऊन्। हामीलाई सत्यरूप दिव्य वाणी प्राप्त होस्। मनुष्यका हितकारी देवगण हाम्रा यज्ञमा पङ्क्तिबद्ध भएर अधिष्ठित होऊन् र शत्रुहरूको विनाश गरुन्।

यो वाघते ददाति सूनरं वसु स धत्ते अक्षिति श्रवः।
तस्मा इळां सुवीरामा यजामहे सुप्रतूर्तिमनेहसम् ॥४॥
ऋत्विक्लाई धन दिने यजमानले अक्षय यश प्राप्त गर्छन्। यजमान र ऋत्विक्को उन्नतिका लागि हामी पराक्रमी, शत्रुनाशक र अपराजेय मातृभूमिको वन्दना गर्दछौं।

प्र नूनं ब्रह्मणस्पतिर्मन्त्रं वदत्युक्थ्यम्।
यस्मिन्निन्द्रो वरुणो मित्रो अर्यमा देवा ओकांसि चक्रिरे ॥५॥
ब्रह्मणस्पतिले निश्चय नै स्तुतियोग्य मन्त्रहरू विधिपूर्वक उच्चरित गराउँछन्। ती मन्त्रहरूमा इन्द्र, वरुण, मित्र र अर्यमा आदि देवगण निवास गरेका हुन्छन्।

तमिद्वोचेमा विदथेषु शम्भुवं मन्त्रं देवा अनेहसम्।
इमां च वाचं प्रतिहर्यथा नरो विश्वेद्वामा वो अश्नवत् ॥६॥
हे नेतृत्व गर्नेहरू ! यज्ञमा हामी सुखप्रद, विघ्ननाशक मन्त्र उच्चारण गर्दछौं। हे नेतृत्व गर्ने देवताहरू ! यदि तिमीहरू यस मन्त्ररूपी वाणीको कामना गर्दछौ भने यो सुन्दर स्तोत्र तिमीहरूलाई प्राप्त होस्।

**को देवयन्तमश्नवज्जनं को वृक्तबर्हिषम्।**
**प्रप्र दाश्वान्पस्त्याभिरस्थितान्तर्वावत्क्षयं दधे ॥७॥**

देवत्व प्राप्त गर्न चाहनेका नजिकमा अरू को पो आउला र ? निश्चय पनि देवत्व प्राप्त गर्न चाहनेहरू नै आउँछन्। तिमीहरूबाट हविदाता याजकले आफ्ना सन्तान र पशुहरूका निम्ति उत्तम घरको आश्रय पाउँछन्।

**उप क्षत्रं पृञ्चीत हन्ति राजभिर्भये चित्सुक्षितिं दधे।**
**नास्य वर्ता न तरुता महाधने नार्भे अस्ति वज्रिणः ॥८॥**

ब्रह्मणस्पतिदेवले क्षत्रिय बल अभिवृद्धि गराएर राजाहरूको सहायता गर्दछन् र तिनका शुत्रहरू मार्दछन्। डर लागेका बेला उत्तम धैर्य धारण गर्ने वज्रधारी ब्रह्मणस्पतिदेव ठूला अथवा साना युद्धमा कसैसित पराजित हुँदैनन्।

[सूक्त - ४१]

**ऋषि** - कण्व घौर। **देवता** - वरुण मित्र अर्यमा आदित्यगण। **छन्द** - गायत्री।

**यं रक्षन्ति प्रचेतसो वरुणो मित्रो अर्यमा। नू चित्स दभ्यते जनः ॥१॥**

जुन याजकलाई ज्ञानसम्पन्न मित्र, वरुण र अर्यमा आदि देवताहरूको संरक्षण प्राप्त भएको छ, त्यसलाई कसैले पनि दमन गर्न सक्दैन।

**यं बाहुतेव पिप्रति पान्ति मर्त्यं रिषः। अरिष्टः सर्व एधते ॥२॥**

आफ्नै हातले विभिन्न किसिमको धन दिँदै वरुणादि देवताहरूले जुन मानिसको रक्षा गर्छन्, शत्रुहरूबाट अहिंसित भएर तिनको उन्नति हुन्छ।

**वि दुर्गा वि द्विषः पुरो घ्नन्ति राजान एषाम्। नयन्ति दुरिता तिरः ॥३॥**

राजाजस्ता वरुण देवताले शत्रुका सहरका किल्ला विशेष रूपले नष्ट गर्दछन्। उनी याजकलाई दुःख दिने मुख्य कारणहरू उनी टाढा हटाइदिन्छन्।

**सुगः पन्था अनृक्षर आदित्यास ऋतं यते। नात्रावखादो अस्ति वः ॥४॥**

हे आदित्यहरू ! तिमी यज्ञमा आउने मार्ग अति सुगम र काँडा आदिको बाधाविनाको छ। यस यज्ञमा तिम्रा लागि उत्तम हविष्यान्न समर्पित गरिएको छ।

**यं यज्ञं नयथा नर आदित्या ऋजुना पथा। प्र वः स धीतये नशत् ॥५॥**

हे आदित्यहरू हो ! जुन यज्ञ तिमीहरू सजिलो तरिकाले सम्पन्न गराउँछौ, त्यो यज्ञ तिमीहरू विशेष रूपले सम्झन्छौ। त्यसलाई कसै गरी बिर्सन सकिँदैन।

**स रत्नं मर्त्यो वसु विश्वं तोकमुत त्मना। अच्छा गच्छत्यस्तृतः ॥६ ॥**

हे आदित्यहरू हो ! तिमीहरूका याजक कसैसित पनि पराजित हुँदैनन्। रत्न आदि धन र सन्तान प्राप्त गर्दै उनले उन्नति गर्दछन्।

**कथा राधाम सखायः स्तोमं मित्रस्यार्यम्णः। महि प्सरो वरुणस्य ॥७॥**

हे मित्रहरू हो ! मित्र, अर्यमा र वरुणदेवका महान् ऐश्वर्यसाधनको महिमा अपार छ। त्यसको वर्णन कसरी गर्ने ?

**मा वो घ्नन्तं मा शपन्तं प्रति वोचे देवयन्तम्। सुम्नैरिद्व आ विवासे ॥८॥**

हे देवताहरू ! देवत्व प्राप्त गर्न खोज्ने साधकहरूलाई कसैले रिस गर्दै हेपेर मुख छोड्न र बिझाउन नसकोस्। हामी स्तुति वचनले तिमीहरूलाई प्रसन्न गर्दछौँ।

**चतुरश्चिद्ददमानाद्बिभीयादा निधातोः। न दुरुक्ताय स्पृहयेत् ॥९॥**

जुवा खेल्दा पासा नखसुन्जेल हारजितको डर रहन्छ। त्यसै गरी खराब कुरो बोल्न पनि डराउनुपर्छ। त्यससित स्नेह गर्नुहुँदैन।

[सूक्त - ४२]

**ऋषि** - कण्वघौर। **देवता** - पूषा। **छन्द** - गायत्री।

**सं पूषन्नध्वनस्तिर व्यंहो विमुचो नपात्। सक्ष्वा देव प्र णस्पुरः ॥१॥**

हे पूषादेव ! हामीमाथि सुखको वर्षा गराइदेऊ। पाप मार्गबाट हामीलाई पर लैजाऊ। हे देव ! हामीलाई अघि बढाऊ।

**यो नः पूषन्नघो वृको दुःशेव आदिदेशति। अप स्म तं पथो जहि ॥२॥**
हे पूषादेव ! जुन हिंसक, चोर, जुवाडे आदिले हामीमाथि अधिकार गर्न खोजेका छन्, तिनीहरूलाई हामीदेखि टाढा पुऱ्याइदेऊ।

**अप त्यं परिपन्थिनं मुषीवाणं हुरश्चितम्। दूरमधि स्रुतेरज ॥३॥**
हे पूषादेव ! मार्गमा कुटपिट गर्ने र लुट्ने कुटिल चोरहरूलाई हाम्रो मार्गबाट टाढा लगेर विनाश गर।

**त्वं तस्य द्वयाविनोऽघशंसस्य कस्य चित्। पदाभि तिष्ठ तपुषिम् ॥४॥**
दोहोरो नीतिमा चल्ने कुटिल हिंसकहरूका प्रत्येकका शरीरमा तिमी गोडाले कुल्चिएर उभिइदेऊ र तिनलाई दबाइराख, बढ्न नदेऊ।

**आ तत्ते दस्र मन्तुमः पूषन्नवो वृणीमहे। येन पितॄनचोदयः ॥५॥**
हे दुष्टनाशक मनीषि पूषादेव ! हामी आफ्नो रक्षाका लागि तिम्रो स्तुति गर्दछौं। तिम्रै संरक्षणमा हाम्रा पुर्खाहरू हुर्केबढेका थिए।

**अधा नो विश्वसौभग हिरण्यवाशीमत्तम। धनानि सुषणा कृधि ॥६॥**
हे सम्पूर्ण सौभाग्ययुक्त र स्वर्ण आभूषणले सम्पन्न पूषादेव ! हामीलाई सबै खालका उत्तम धन र सामर्थ्यहरू प्रदान गर।

**अति नः सश्चतो नय सुगा नः सुपथा कृणु। पूषन्निह क्रतुं विदः ॥७॥**
हे पूषादेव ! कुटिल दुष्टहरूबाट हामीलाई टाढा लिएर जाऊ। हामीलाई सुगम र सुपथ रूपमा कर्तव्य पालन गर्ने ज्ञान देऊ।

**अभि सूयवसं नय न नवज्वारो अध्वने। पूषन्निह क्रतुं विदः ॥८॥**
हे पूषादेव ! हामीलाई मनग्गे जौ आदि अन्न भएका ठाउँमा लैजाऊ। मार्गमा नयाँ सङ्कट आउन नपाऊन्। हामीलाई आफ्ना कर्तव्यहरूको ज्ञान गराऊ।

**शग्धि पूर्धि प्र यंसि च शिशीहि प्रास्युदरम्। पूषन्निह क्रतुं विदः ॥९॥**
हे पूषादेव ! हामीलाई सामर्थ्य देऊ। हामीलाई धनले सम्पन्न गराऊ। हामीलाई साधनसम्पन्न गराऊ। हामीलाई तेजस्वी बनाऊ। हाम्रो पेट पूर्ण गराऊ। हामीले आफ्ना कर्तव्य जानौं।

**न पूषणं मेथामसि सूक्तैरभि गृणीमसि। वसूनि दस्ममीमहे ॥१०॥**
हामी पूषादेवलाई बिर्सदैनौं। सूक्तहरूबाट उनको स्तुति गर्दछौं। प्रकाशमान सम्पदा हामी उनीबाटै माग्दछौं।

[सूक्त - ४३]

**ऋषि - कण्व घौर। देवता - रुद्र मित्रावरुण सोम। छन्द - गायत्री अनुष्टुप्।**

**कद्रुद्राय प्रचेतसे मीढुष्टमाय तव्यसे। वोचेम शन्तमं हृदे ॥१॥**
विशिष्ट ज्ञानसम्पन्न, सुखी र बलशाली रुद्रदेवका निम्ति कुन सुखप्रद स्तोत्र पाठ गरौं ?

**यथा नो अदितिः करत्पश्वे नृभ्यो यथा गवे। यथा तोकाय रुद्रियम् ॥२॥**
हामीलाई, हाम्रा पशुलाई, हाम्रा आफन्तहरूलाई, हाम्रा गाईलाई र हाम्रा सन्तानहरूलाई अदितिले आरोग्यवर्धक औषधिहरूको व्यवस्था गरुन्।

**यथा नो मित्रो वरुणो यथा रुद्रश्चिकेतति। यथा विश्वे सजोषसः ॥३॥**
मित्र, वरुण र रुद्रदेवले हाम्रो हितका लागि प्रयत्न गरेझैं अन्य समस्त देवताहरूले पनि हाम्रो कल्याण गरुन्।

**गाथपतिं मेधपतिं रुद्रं जलाषभेषजम्। तच्छंयोः सुम्नमीमहे ॥४॥**
सुखद जल र औषधीले युक्त, स्तुतिहरूका स्वामी र यज्ञका स्वामी रुद्रदेवसित हामी आरोग्य सुखको अपेक्षा गर्दछौं।

**यः शुक्र इव सूर्यो हिरण्यमिव रोचते। श्रेष्ठो देवानां वसुः ॥५॥**
सामर्थ्यवान् सूर्य र स्वर्णजस्तै दीप्तिमान् रुद्रदेव सबै देवहरूमा श्रेष्ठ र ऐश्वर्यवान् छन्।

**शं नः करत्यर्वते सुगं मेषाय मेष्ये। नृभ्यो नारिभ्यो गवे ॥६॥**
हाम्रा अश्व, बलिका पशु, भेडा, नरनारी र गाईका लागि रुद्रदेव अति मङ्गलकारी छन्।

**अस्मे सोम श्रियमधि नि धेहि शतस्य नृणाम्। महि श्रवस्तुविनृम्णम् ॥७॥**

हे सोमदेव ! हामी मनुष्यहरूलाई सयौं किसिमको ऐश्वर्य, तेजयुक्त अन्न, बल र महान् यश प्रदान गर।

**मा नः सोम परिबाधो मारातयो जुहुरन्त। आ न इन्दो वाजे भज ॥८॥**

सोमयागमा बाधा दिने शत्रुले हामीलाई प्रताडित नगरुन्। कृपण र दुष्टहरूबाट हामी पीडित नहोऔं। हे सोमदेव ! तिमी हाम्रो बल वृद्धि गराऊ।

**यास्ते प्रजा अमृतस्य परस्मिन्धामन्नृतस्य।**
**मूर्धा नाभा सोम वेन आभूषन्तीः सोम वेदः ॥९॥**

हे सोमदेव ! यज्ञका श्रेष्ठ स्थानमा प्रतिष्ठित तिमी अमृतले युक्त छौ। यज्ञकार्यका सर्वोच्च स्थानमा विभूषित प्रजाहरूलाई चिन।

[सूक्त - ४४]

**ऋषि** - प्रकण्व काण्व। **देवता** - अग्नि अश्विनीकुमार उषा। **छन्द** - बार्हत प्रगाथ।

**अग्ने विवस्वदुषसश्चित्रं राधो अमर्त्य।**
**आ दाशुषे जातवेदो वहा त्वमद्या देवाँ उषर्बुधः ॥१॥**

हे अमर अग्निदेव ! उषा कालमा विलक्षण शक्ति प्रवाहित हुन्छ। यो दैवी सम्पदा नित्य दान गर्ने व्यक्तिहरूलाई देऊ। हे सर्वज्ञ ! उषाकालमा जागृत भएका देवताहरूलाई पनि यहाँ ल्याऊ।

**जुष्टो हि दूतो असि हव्यवाहनोऽग्ने रथीरध्वराणाम्।**
**सजूरश्विभ्यामुषसा सुवीर्यमस्मे धेहि श्रवो बृहत् ॥२॥**

हे अग्निदेव ! तिमी सेवा गर्न योग्य देवताकहाँ हवि पुर्‍याउने दूत हौ र यज्ञमा देवताहरूलाई ल्याउने रथजस्तै छौ। अश्विनीकुमारहरू र उषादेवीका साथ हामीलाई तिमी श्रेष्ठ, पराक्रमी एवं यशस्वी बनाऊ।

**अद्या दूतं वृणीमहे वसुमग्निं पुरुप्रियम्।**
**धूमकेतुं भाऋजीकं व्युष्टिषु यज्ञानामध्वरश्रियम् ॥३॥**

उषाकालमा सम्पन्न हुने, धुवाँरूपी पताका र ज्वालाले सुशोभित यज्ञले सर्वप्रिय देवदूत, सबका आश्रय एवं महान् अग्निदेवलाई हवन ग्रहण गर्दछन् र शोभाले सम्पन्न हुन्छन्।

**श्रेष्ठं यविष्ठमतिथिं स्वाहुतं जुष्टं जनाय दाशुषे।**
**देवाँ अ च्छा यातवे जातवेदसमग्निमीडे व्युष्टिषु ॥४॥**

सर्वश्रेष्ठ, अति युवा, अतिथिरूप वन्दनीय, हविदाता, यजमानका पूजनीय, आहवनीय तथा सर्वज्ञ अग्निदेवलाई दिनहुँ स्तुति गर्दछौं, उनले हामीलाई देवत्वतर्फ लैजाऊन्।

**स्तविष्यामि त्वामहं विश्वस्यामृत भोजन।**
**अग्ने त्रातारममृतं मियेध्य जियष्ठं हव्यवाहन ॥५॥**

अविनाशी, सबैलाई जीवन दिने, हविवाहक, विश्वका रक्षक, सबैका आराध्य, चिरयुवा हे अग्निदेव ! तिमीलाई हामी स्तुति गर्दछौं।

**सुशंसो बोधि गृणते यविष्ठ्य मधुजिह्वः स्वाहुतः।**
**प्रस्कण्वस्य प्रतिरन्नायुर्जीवसे नमस्या दैव्यं जनम् ॥६॥**

मधुर जिह्वा भएका, याजकहरूको स्तुतिका पात्र, हे तरुण अग्निदेव ! तिमी राम्रोसित आहुति प्राप्त गर्दछौ। याजकहरूको आकाङ्क्षा तिमी बुझ। प्रस्कण्व आदि ज्ञानीहरूलाई दीर्घजीवन प्रदान गर्दै तिमी देवगणलाई सम्मानित गर।

**होतारं विश्ववेदसं सं हि त्वा विश इन्धते।**
**स आ वह पुरुहूत प्रचेतसोऽग्ने देवाँ इह द्रवत् ॥७॥**

होताका रूपमा विश्वको ज्ञान प्राप्त गर्ने हे अग्निदेव ! तिमीलाई मनुष्यहरूले उचित रूपमा प्रज्वलित गर्दछन्। धेरैले आहुति प्रदान गर्ने हे अग्निदेव ! प्रकृष्ट ज्ञानले सम्पन्न देवताहरूलाई तीव्र गतिले यज्ञमा ल्याऊ।

सवितारमुषसमश्विना भगमग्निं व्युष्टिषु क्षपः ।
कण्वासस्त्वा सुतसोमास इन्धते हव्यवाहं स्वध्वर ॥८॥

श्रेष्ठ किसिमका यज्ञ सम्पन्न गर्ने हे अग्निदेव ! रात्रिपछिका उषा कालमा तिमी सविता, उषा, दुवै अश्विनीकुमार, भग र अन्य देवताहरूका साथ यहाँ आऊ। सोमरस निचोरेर तयार गर्ने र हविहरू पुऱ्याउने ऋत्विक्गणले तिमीलाई प्रज्वलित गर्दछन्।

पतिर्ह्यध्वराणामग्ने दूतो विशामसि।
उषर्बुध आ वह सोमपीतये देवाँ अद्य स्वर्दृशः ॥९॥

हे अग्निदेव ! तिमी साधकहरूद्वारा सम्पन्न हुने यज्ञका अधिपति र देवताका दूत हौ। उषाकालमा जाग्ने देवात्मालाई आज सोमपानका निम्ति यहाँ यज्ञस्थलमा ल्याऊ।

अग्ने पूर्वा अनूषसो विभावसो दीदेथ विश्वदर्शतः ।
असि ग्रामेष्ववित पुरोहितो ऽसि यज्ञेषु मानुषः ॥१०॥

हे विशिष्ट दीप्तिमान् अग्निदेव ! विश्वदर्शनीय उषाकालभन्दा पहिले तिमी प्रदीप्त हुन्छौ। तिमी गाउँको रक्षा गर्छौ र यज्ञ तथा मानिसका अग्रणी नेताजस्तै पूजनीय छौ।

नि त्वा यज्ञस्य साधनमग्ने होतारमृत्विजम्।
मनुष्वद्देव धीमहि प्रचेतसं जीरं दूतममर्त्यम् ॥११॥

हे अग्निदेव ! हामी मानिसहरू तिमीलाई यज्ञको साधनरूप, होतारूप, ऋत्विक्रूप, प्रकृष्ट ज्ञानी रूप, चिरपुरातन रूप र अविनाशी रूपमा स्थापित गर्दछौँ।

यद्देवानां मित्रमहः पुरोहितोऽन्तरो यासि दूत्यम्।
सिन्धोरिव प्रस्वनितास ऊर्मयोऽग्नेर्भ्राजन्ते अर्चयः ॥१२॥

हे मित्रहरूमा महान् अग्निदेव ! तिमी जब यज्ञको पुरोहितका रूपमा देवताहरूका बीच दूतको कर्मका निम्ति जान्छौ त्यस बेला तिम्रा ज्वालाहरू समुद्रका प्रचण्ड छालहरूको जस्तै शब्द गर्दै प्रदीप्त हुन्छन्।

श्रुधि श्रुत्कर्ण वह्निभिर्देवैरग्ने सयावभिः ।
आ सीदन्तु बर्हिषि मित्रो अर्यमा प्रातर्यावाणो अध्वरम् ॥१३॥

प्रार्थनमाथि ध्यान दिने हे अग्निदेव ! हाम्रो स्तुति स्वीकार गर। दिव्य अग्निदेवजस्तै गतिमा हिँड्ने मित्र, अर्यमा आदि देवगण प्रातःकालीन यज्ञमा आएर बसून्।

शृण्वन्तु स्तोमं मरुतः सुदानवोऽग्निजिह्वा ऋतावृधः ।
पिबतु सोमं वरुणो धृतव्रतोऽश्विभ्यामुषसा सजूः ॥१४॥

उत्तम दानशील, अग्निरूपी जिह्वाले यज्ञलाई बढाउने मरुत्गणले स्तोत्र श्रवण गरुन्। नियमपालक वरुणदेव, अश्विनीकुमारहरू र देवी उषाका साथ सोमरस पान गरुन्।

[सूक्त – ४५]

ऋषि – प्रस्कण्व काण्व। देवता – अग्नि देवगण। छन्द – अनुष्टुप्।

त्वमग्ने वसूँरिह रुद्राँ आदित्याँ उत।
यजा स्वध्वरं जनं मनुजातं घृतप्रुषम् ॥१॥

हे अग्निदेव ! घिउको आहुतिले वसु, रुद्र र आदित्य आदि देवताहरूको प्रसन्नताका लागि यज्ञ गर्ने हे अग्निदेव ! घिउको आहुतिले महान् यज्ञ सम्पन्न गर्ने मनुका सन्तानहरूलाई तिमी सत्कार गर।

श्रुष्टीवानो हि दाशुषे देवा अग्ने विचेतसः ।
तान्रोहिदश्व गिर्वणस्त्रयस्त्रिंशतमा वह ॥२॥

हे अग्निदेव ! विशिष्ट ज्ञानसम्पन्न देवगणले हविदातालाई उत्तम सुख दिन्छन्। हे राता घोडाका धनी तथा अत्यन्त स्तुति गर्न योग्य अग्निदेव ! तेत्तीस कोटी देवतालाई यज्ञमा लिएर आऊ।

प्रियमेधवदत्रिवज्जातवेदो विरूपवत्।
अङ्गिरस्वन्महिव्रत प्रस्कण्वस्य श्रुधी हवम् ॥३॥

हे श्रेष्ठकर्मा, ज्ञानसम्पन्न अग्निदेव ! तिमीले प्रतिमेधा, अत्रि, विरूप र अङ्गिराको आह्वान सुनेझैँ अब प्रस्कण्वको पनि आह्वान सुन।

महिकेरव ऊतये प्रियमेधा अहूषत।
राजन्तमध्वराणामग्निं शुक्रेण शोचिषा ॥४॥

दिव्य प्रकाशले युक्त अग्निदेव यज्ञका निम्ति तेजस्वी रूपमा प्रदीप्त भए। महान् कर्म भएका प्रियमेधा ऋषिहरूले आफ्नो रक्षाका लागि अग्निदेवलाई आह्वान गरे।

घृताहवन सन्त्येमा उ षु श्रुधी गिरः।
याभिः कण्वस्य सूनवो हवन्तेऽवसे त्वा ॥५॥

हे घिउको आहुति भक्षण गर्ने अग्निदेव ! कण्वका वंशज, आफ्नो रक्षाका लागि तिम्रो स्तुति गर्दछन्। तिनीहरूको स्तुति तिमी राम्ररी सुन।

त्वां चित्रश्रवस्तम हवन्ते विक्षु जन्तवः।
शोचिष्केशं पुरुप्रियाग्ने हव्याय वोढवे ॥६॥

प्रेमपूर्वक हविष्य ग्रहण गर्ने हे यशस्वी अग्निदेव ! तिमी आश्चर्यजनक वैभवले सम्पन्न छौ। सम्पूर्ण मनुष्य एवं ऋत्विक्‌गण यज्ञ सम्पादनका लागि तिम्रो आह्वान गर्दै हवि समर्पित गर्दछन्।

नि त्वा होतारमृत्विजं दधिरे वसुवित्तमम्।
श्रुत्कर्णं सप्रथस्तमं विप्रा अग्ने दिविष्टिषु ॥७॥

हे अग्निदेव ! तिमी होता रूप, ऋत्विक् रूप, धन धारण गर्ने, स्तुति सुनिदिने र महान् यशस्वी हौ। विद्वान्‌हरू स्वर्गको कामना गर्दै तिमीलाई यज्ञमा स्थापित गर्दछन्।

आ त्वा विप्रा अचुच्यवुः सुतसोमा अभि प्रयः।
बृहद्भा बिभ्रतो हविरग्ने मर्ताय दाशुषे ॥८॥

हे अग्निदेव ! तिमी महान् तेजस्वी छौ। हविष्यान्न र सोमरस तयार गरेर राख्ने विद्वान्, दानशील याजकहरू तिमीलाई स्थापित गर्दछन्।

प्रातर्याव्णः सहस्कृत सोमपेयाय सन्त्य।
इहाद्य दैव्यं जनं बर्हिरा सादया वसो ॥९॥

हे बल उत्पन्न गर्ने अग्निदेव ! तिमी धनका स्वामी हौ र दानशील छौ। यज्ञस्थलमा आउन तयार देवताहरूलाई आज प्रातःकाल बोलाऊ र सोमपान गर्नका लागि कुशका आसनमा बसाऊ।

अर्वाञ्चं दैव्यं जनमग्ने यक्ष्व सहूतिभिः।
अयं सोमः सुदानवस्तं पात तिरोअह्न्यम् ॥१०॥

हे अग्निदेव ! यज्ञका अगाडि उपस्थित देवगणलाई उत्तम वचनले अभिवादन गर्दै यजन गर। हे श्रेष्ठ देवताहरू हो ! तिमीहरूका लागि सोमरस यहाँ तयार छ, पान गर।

## [सूक्त - ४६]

**ऋषि** - प्रस्कण्व काण्व। **देवता** - अश्विनीकुमार। **छन्द** - गायत्री।

एषो उषा अपूर्व्या व्युच्छति प्रिया दिवः। स्तुषे वामश्विना बृहत् ॥१॥

अपूर्व प्रिय उषादेवीले आकाशको तम नाश गर्दछिन्। देवी उषाका कार्यमा सहयोगी हे अश्विनीकुरमाहरू ! हामी महान् स्तोत्रले तिमीहरूलाई स्तुति गर्दछौं।

या दस्रा सिन्धुमातरा मनोतरा रयीणाम्। धिया देवा वसुविदा ॥२॥

हे अश्विनीकुमारहरू हो ! शत्रुलाई नाश गर्ने र नदीका उत्पत्तिकर्ता तिमीहरू नै हौ। विवेकपूर्वक कर्म गर्नेहरूलाई तिमीहरू अपार सम्पत्ति दिने गर्दछौ।

वच्यन्ते वां ककुहासो जूर्णायामधि विष्टपि। यद्वां रथो विभिष्पतात् ॥३॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरूको रथ पक्षीझैँ उडेर आकाशमा पुग्दछ। त्यस बेला स्वर्गलोकमा तिमीहरूका लागि प्रशंसनीय स्तोत्रको पाठ हुने गर्दछ।

हविषा जारो अपां पिपर्ति पपुरिर्नरा। पिता कुटस्य चर्षणिः ॥४॥

हे देवपुरुषहरू हो ! जल सुकाइदिने, पिताले झैं पालनपोषण गर्ने, सबै कार्यका द्रष्टा सूर्यदेवले हामीबाट प्रदान गरिएका हविद्वारा तिमीहरूलाई सन्तुष्ट गर्दछन्।

आदारो वां मतीनां नासत्या मतवचसा। पातं सोमस्य धृष्णुया ॥५॥

हे असत्यविहीन, मननपूर्वक वचन बोल्ने अश्विनीकुमारहरू हो ! तिमीहरू आफ्नो बुद्धि तीव्र रूपमा प्रेरित गराउने र सङ्घर्ष शक्ति बढाउने यो सोमरस पान गर।

या नः पीपरदश्विना ज्योतिष्मती तमस्तिरः तामस्मे रासाथामिषम् ॥६॥
हे अश्विनीकुमारहरू हो ! अन्धकार हटाएर जीवनलाई प्रकाशतर्फ उन्मुख गर्ने पोषक अन्नहरू जजेति छन् ती हामीलाई देओ।

आनो नावा मतीनां यातं पाराय गन्तवे। युञ्जाथामश्विना रथम् ॥७॥
हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै आफ्ना रथ तयार गरेर हामीकहाँ आओ। आफ्ना श्रेष्ठ बुद्धिले हामीलाई दुःखका सागरबाट पारि लगाइदेओ।

अरित्रं वां दिवस्पृथु तीर्थे सिन्धूनां रथः। धिया युयुज्र इन्दवः ॥८॥
हे अश्विनीकुमारहरू हो ! तिमीहरू आउनका लागि द्युलोक साधन बनेको छ र त्यसको सीमा विस्तृत छ। नदी र तीर्थ प्रदेशमा पनि तिमीहरूकै बाटो छ। तिमीहरूको रथ पनि तयार छ। तिमीहरूका लागि यहाँ विचार पुऱ्याईकन सोमरस तयार गरिएको छ।

दिवस्कण्वास इन्दवो वसु सिन्धूनां पदे। स्वं वव्रिं कुह धित्सथः ॥९॥
कण्वका वंशजहरूले तयार गरेको सोमरस दिव्यताले परिपूर्ण छ। नदीका किनारमा ऐश्वर्य राखिएको छ। हे अश्विनीकुमारहरू हो ! तिमीहरू आफ्नो स्वरूप कहाँ प्रदर्शित गर्न चाहन्छौ ?

अभूदु भा उ अंशवे हिरण्यं प्रति सूर्यः। व्यख्यज्जिह्वयासितः ॥१०॥
अमृतमयी किरणयुक्त सूर्यदेव आफ्नै आभाले सुनको डल्लोजस्तो भएर उदाउँदै छन्। यस बेला श्याम वर्णका अग्निदेव ज्वालारूपी जिह्वाले विशेष रूपमा प्रकाशित भएका छन्। हे अश्विनीकुमारहरू हो ! तिमीहरूका आउने बेला यही हो।

अभूदु पारमेतवे पन्था ऋतस्य साधुया। अदर्शि वि स्रुतिर्दिवः ॥११॥
द्युलोकबाट अन्धकार मेटाउँदै विशिष्ट प्रभा प्रकट हुन लागेको छ। यसो भएकाले यज्ञको मार्ग राम्ररी देखियो। त्यसैले हे अश्विनीकुमारहरू हो ! तिमीहरू आइदेओ।

तत्तदिदश्विनोरवो जरिता प्रति भूषति। मदे सोमस्य पिप्रतोः ॥१२॥
सोमरस पाउँदा ज्यादै रमाउने अश्विनीकुमारका उत्तम संरक्षणको बयान स्तोताहरूले राम्ररी गर्दछन्।

वावसाना विवस्वति सोमस्य पीत्या गिरा। मनुष्वच्छंभू आ गतम् ॥१३॥
हे दीप्तिमान् मनमा निवास गर्ने, सुखदायक अश्विनीकुमारहरू ! मनुले झैँ श्रेष्ठ सुसार गर्ने यजमानका नजिक तिमीहरू दुवै निवास गर्दछौ। त्यसैले सोमपान गर्न र स्तुति सुन्नका लागि यस यज्ञमा आओ।

युवोरुषा अनु श्रियं परिज्मनोरुपाचरत्। ऋता वनथो अक्तुभिः ॥१४॥
हे अश्विनीकुमारहरू हो ! चारैतिर यात्रा गर्ने तिमीहरू दुईलाई शोभासम्पन्न भएकी उषादेवीले पछ्याउँछिन्। तिमीहरू रातका समयमा पनि यज्ञको सेवन गर्दछौ।

उभा पिबतमश्विनोभा नः शर्म यच्छतम्। अविद्रियाभिरूतिभिः ॥१५॥
हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै सोमरस पान गर। आलस्य नगरीकन रक्षा गर्दै हामीलाई सुख प्रदान गर।

## [सूक्त - ४७]

ऋषि - प्रस्कण्व काण्व। देवता - अश्विनीकुमार। छन्द - बार्हत प्रगाथ।

अयं वां मधुमत्तमः सुतः सोम ऋतावृधा।
तमश्विना पिबतं तिरोअह्न्यं धत्तं रत्नानि दाशुषे ॥१॥
हे यज्ञकर्मलाई विस्तृत गराउने अश्विनीकुमारहरू हो ! तिमीहरू यस यज्ञमा अत्यन्त मधुर तथा अघिल्लो दिन पहिले तयार गरिएको सोमरस पान गर। यज्ञकर्ता यजमानलाई रत्न र ऐश्वर्य प्रदान गर।

त्रिवन्धुरेण त्रिवृता सुपेशसा रथेना यातमश्विना।
कण्वासो वां ब्रह्म कृण्वन्त्यध्वरे तेषां सु शृणुतं हवम् ॥२॥
हे अश्विनीकुमार हो ! तीन वृत्त भएका, तीन अवलम्बन भएका अति सुशोभित रथमा यहाँ आओ। यज्ञमा कण्वका वंशजले तिमीहरू दुवैलाई मन्त्रयुक्त स्तुति गर्दछन्, उनीहरूको आह्वान सुन।

अश्विना मधुमत्तमं पातं सोममृतावृधा।
अथाद्य दस्रा वसु बिभ्रता रथे दाश्वांसमुप गच्छतम् ॥३॥

हे शत्रुनाशक, यज्ञवर्द्धक अश्विनीकुमारहरू हो ! अत्यन्त मिठो सोमरस पान गर। आज रथभरि धन राखेर हविदाता यजमानका नजिकै आओ।

त्रिषधस्थे बर्हिषि विश्ववेदसा मध्वा यज्ञं मिमिक्षतम्।
कण्वासो वां सुतसोमा अभिद्यवो युवां हवन्ते अश्विना ॥४॥

हे सर्वज्ञ अश्विनीकुमारहरू हो ! तीन ठाउँमा राखिएका कुशका आसनमा बसेर तिमीहरू यज्ञको सेचन गर। स्वर्गको कामना गर्ने कण्वका वंशजले सोमरस निचोरेर तिमीहरू दुवैलाई बोलाउँछन्।

याभिः कण्वमभिष्टिभिः प्रावतं युवमश्विना।
ताभिः ष्व१स्माँ अवतं शुभस्पती पातं सोममृतावृधा ॥५॥

यज्ञलाई बढाउने र शुभकर्मका पोषक हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैले जुन सुरक्षित साधनद्वारा कण्वको रक्षा राम्री गरेका थियौ, तिनै साधनहरूले हाम्रो पनि उचित रक्षा गर र प्रस्तुत सोमरस पान गर।

सुदासे दस्रा वसु बिभ्रता रथे पृक्षो वहतमश्विना।
रयिं समुद्रादुत वा दिवस्पर्यस्मे धत्तं पुरुस्पृहम् ॥६॥

शत्रुका लागि उग्र रूप धारण गर्ने हे अश्विनीकुमार हो ! रथमा धन र अन्न राखेर तिमीहरूले सुदासकहाँ पुऱ्यायौ। उसरी नै धेरैले खोज्ने गरेको धन अन्तरिक्ष अथवा सागरबाट ल्याएर हामीलाई प्रदान गर।

यन्नासत्या परावति यद्वा स्थो अधि तुर्वशे।
अतो रथेन सुवृता न आ गतं साकं सूर्यस्य रश्मिभिः ॥७॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू टाढा या नजिकै जहाँ छौ, त्यहींबाट उत्तम गति भएका रथमा सूर्यको रश्मिसँगै हाम्रा नजिक आओ।

अर्वाञ्चा वां सप्तयोऽध्वरश्रियो वहन्तु सवनेदुप।
इषं पृञ्चन्ता सुकृते सुदानव आ बर्हिः सीदतं नरा ॥८॥

हे देवपुरुष अश्विनीकुमारहरू हो ! यज्ञको शोभा बढाउने अश्वले तिमीहरू दुवैलाई लिएर सोमयागका नजिकै आऊन्। उत्तम कर्म गर्ने र दान दिने याजकहरूमा अन्नको आपूर्ति गर्दै तिमीहरू दुवै कुशका आसनमा बस।

तेन नासत्या गतं रथेन सूर्यत्वचा।
येन शश्वदूहथुर्दाशुषे वसु मध्वः सोमस्य पीतये ॥९॥

हे सत्यवर्धक अश्विनीकुमारहरू हो ! सूर्यसमान तेजस्वी जुन रथमा दाताले याजकलाई सधैंभरि धन ल्याएर दिने गर्दछन्, उसै रथमा तिमीहरू मिठो सोमपान गर्न यहाँ आओ।

उक्थेभिरर्वागवसे पुरूवसू अर्कैश्च नि ह्वयामहे।
शश्वत्कण्वानां सदसि प्रिये हि कं सोमं पपथुरश्विना ॥१०॥

हे विपुल धनले सम्पन्न अश्विनीकुमारहरू हो ! आफ्नो रक्षाका निम्ति हामी स्तोत्र र पूजाअर्चनाले बारम्बार तिमीहरूलाई आह्वान गर्दछौं। कण्वका वंशजहरूका यज्ञसभामा तिमीहरू सधैं सोमपान गर्दछौ।

[सूक्त - ४८]

ऋषि – प्रस्कण्व काण्व। देवता – उषा। छन्द – बार्हत प्रगाथ।

सह वामेन न उषो व्युच्छा दुहितर्दिवः।
सह द्युम्नेन बृहता विभावरि राया देवि दास्वती ॥१॥

हे आकाशपुत्री उषा ! उत्तम, तेजस्वी, दानी र धन तथा महान् ऐश्वर्यले युक्त भएर तिमी हाम्रा सम्मुख प्रकट होऊ, हामीलाई तिम्रो कृपा प्राप्त भइरहोस्।

अश्वावतीर्गोमतीर्विश्वसुविदो भूरि च्यवन्त वस्तवे।
उदीरय प्रति मा सूनृता उषश्चोद राधो मघोनाम् ॥२॥

घोडा, गाई आदिले सम्पन्न धनधान्य प्रदान गर्ने उषा सम्पूर्ण प्राणीको कल्याणका लागि प्रकाशित भएकी छिन्। हे उषा ! कल्याणकारी वचनका साथै हामीलाई तिमी उपयुक्त धन र वैभव प्रदान गर।

उवासोषा उच्छाच्च नु देवी जीरा रथानाम्।
ये अस्या आचरणेषु दध्रिरे समुद्रे न श्रवस्यवः ॥३॥

पहिलेदेखि निवास गरिरहेकी उषादेवी रथ चलाउँदै अब प्रकट भइदिऊन्। रत्न खोज्ने मानिसले समुद्रतर्फ मन लगाएझैँ हामी उषादेवीका आगमनको प्रतीक्षा गर्दै छौँ।

उषो ये ते प्र यामेषु युञ्जते मनो दानाय सूरयः।
अत्राह तत्कण्व एषां कण्वतमो नाम गृणाति नृणाम् ॥४॥

हे उषा ! तिमी आउने बेलामा जुन स्तोता धन दान गर्ने विचार गर्दछ, अत्यन्त मेधावी कण्व त्यस्ता मानिसको प्रशंसा गर्दै स्तोत्रहरू गाउँछन्।

आ घा योषेव सूनर्युषा याति प्रभुञ्जती।
जरयन्ती वृजनं पद्वदीयत उत्पातयति पक्षिणः ॥५॥

सबैको राम्रो हेरचाह गर्ने उषादेवी आएर निर्बललाई शक्तिशाली बनाउँछिन्। तिनले हातगोडा हुनेलाई कर्म गर्न प्रेरित गर्छिन् र चराहरूलाई सक्रिय गराउँछिन्। उषादेवी उत्तम गृहिणीजस्तै छिन्।

वि या सृजति समनं व्यर्थिनः पदं न वेत्योदती।
वयो नकिष्टे पप्तिवांस आसते व्युष्टौ वाजिनीवति ॥६॥

उषादेवी सबैको मन कर्म गर्नतिर प्रेरित गर्दछिन् र धनको इच्छा गर्ने पुरुषार्थीलाई प्रेरणा दिन्छिन्। यी जीवनदात्री उषादेवी निरन्तर गतिशील रहन्छिन्। हे अन्नदात्री उषा ! तिमी प्रकाशित भइसकेपछि चराहरू आआफ्ना गुँडमा बसिरहँदैनन्।

एषायुक्त परावतः सूर्यस्योदयनादधि।
शतं रथेभिः सुभगोषा इयं वि यात्यभि मानुषान् ॥७॥

यी उषादेवी सूर्य उदाउने स्थानभन्द टाढा रहेका देशहरूलाई पनि नजिक्याउँछिन्। यी सौभाग्यशालिनी उषादेवी मनुष्यलोकमा सयौं रथहरूद्वारा गमन गर्दछिन्।

विश्वमस्या नानाम चक्षसे जगज्ज्योतिष्कृणोति सूनरी।
अप द्वेषो मघोनी दुहिता दिव उषा उच्छदप स्रिधः ॥८॥

सम्पूर्ण जगतले यी उषादेवीलाई झुकेर नमस्कार गर्दछन्। प्रकाश दिने, उत्तम मार्ग देखाउने, ऐश्वर्यसम्पन्न, आकाशपुत्री उषाले हामीलाई दुःख दिने शत्रु टाढा लखेट्छिन्।

उष आ भाहि भानुना चन्द्रेण दुहितर्दिवः।
आवहन्ती भूर्यस्मभ्यं सौभगं व्युच्छन्ती दिविष्टिषु ॥९॥

हे आकाशपुत्री उषा ! तिमी आह्लादप्रद दीप्तिले सर्वत्र प्रकाशित छौ। हामीलाई इच्छा लागेको स्वर्गीय सुखका साथै सम्पूर्ण उत्तम सौभाग्यहरू लिएर आऊ र दुर्भाग्यरूपी अन्धकारलाई हटाइदेऊ।

विश्वस्य हि प्राणनं जीवनं त्वे वि यदुच्छसि सूनरि।
सा नो रथेन बृहता विभावरि श्रुधि चित्रामघे हवम् ॥१०॥

हे सुमार्ग प्रेरक उषादेवी ! उदय हुनासाथ तिमी नै विश्वका सम्पूर्ण प्राणीहरूको जीवन आधार बन्दछौ। विलक्षण धनले युक्त कान्तिमती हे उषादेवी ! तिमी आफ्ना रथमा आएर हाम्रो पुकार सुनिदेऊ।

उषो वाजं हि वंस्व यश्चित्रो मानुषे जने।
तेना वह सुकृतो अध्वराँ उप ये त्वा गृणन्ति वह्नयः ॥११॥

हे उषादेवी ! मनुष्यका लागि विभिन्न अन्न र साधन वृद्धि गर। जुन याजक तिम्रो स्तुति गर्दछन् उनीहरूका उत्तम कर्मले सन्तुष्ट होऊ र तिनलाई यज्ञीय कर्ममा प्रेरित गर।

विश्वान्देवाँ आ वह सोमपीतयेऽन्तरिक्षादुषस्त्वम्।
सास्मासु धा गोमदश्वावदुक्थ्यमुषो वाजं सुवीर्यम् ॥१२॥

हे उषादेवी ! सोमपान गर्नका लागि अन्तरिक्षबाट सबै देवताहरूलाई यहाँ लिएर आऊ। हामीलाई घोडा, गाई आदिले युक्त धन र पौष्टिक अन्न प्रदान गर।

यस्या रुशन्तो अर्चयः प्रति भद्रा अदृक्षत।
सा नो रयिं विश्ववारं सुपेशसमुषा ददातु सुग्म्यम् ॥१३॥

जुन उषादेवीका प्रकाशित किरणहरू मङ्गलकारी हुन्छन्, उनै उषादेवीले हामी सबैका लागि ग्रहण गर्न योग्य, उत्तम, सुखप्रद धन प्राप्त गराऊन्।

ये चिद्धि त्वामृषयः पूर्व ऊतये जुहूरेऽवसे महि।
सा नः स्तोमाँ अभि गृणीहि राधसोषः शुक्रेण शोचिषा ॥१४॥

हे श्रेष्ठ उषादेवी ! उहिलेका ऋषिहरू अन्न र संरक्षण प्राप्त गर्नका लागि तिमीलाई बोलाउँथे। तिमी यश र तेजस्विताले युक्त भएर हाम्रा स्तोत्रहरू स्वीकार गर।

उषो यदद्य भानुना वि द्वारावृणवो दिवः।
प्र नो यच्छतादवृकं पृथु च्छर्दिः प्र देवि गोमतीरिषः ॥१५॥

हे उषादेवी ! तिमीले प्रकाशका दुवै द्वार खोलिदिएकी छ्यौ। अब तिमी हिंस्रकहरूबाट रक्षत गर्दै विशाल आवास र दुध आदिले युक्त अन्न हामीलाई प्रदान गर।

सं नो राया बृहता विश्वपेशसा मिमिक्ष्वा समिडाभिरा।
सं द्युम्नेन विश्वतुरोषो महि सं वाजैर्वाजिनीवति ॥१६॥

हे उषादेवी ! हामीलाई सम्पूर्ण पुष्टिप्रद महान् धनहरूले युक्त गराऊ। अन्न प्रदान गर्ने हे श्रेष्ठ उषादेवी ! हामीलाई शत्रु संहार गर्ने बल दिएर अन्नले सम्पन्न गराऊ।

[सूक्त – ४९]

ऋषि – प्रस्कण्व काण्व। देवता – उषा। छन्द – अनुष्टुप्।

उषो भद्रेभिरा गहि दिवश्चिद्रोचनादधि।
वहन्त्वरुणप्सव उप त्वा सोमिनो गृहम् ॥१॥

हे उषादेवी ! द्युलोकका दीप्तिमान् स्थानबाट कल्याणकारी मार्ग पहिल्याउँदै तिमी यहाँ आऊ। अरुण वर्णका अश्वले तिमीलाई सोमयाग गर्न लागेका ठाउँमा पुऱ्याऊन्।

सुपेशसं सुखं रथं यमध्यस्था उषस्त्वम्।
तेना सुश्रवसं जनं प्रावाद्य दुहितर्दिवः ॥२॥

हे आकाशपुत्री उषादेवी ! तिमी जुन सुन्दर र सुखप्रद रथमा आरूढ छ्यौ, उसै रथद्वारा उत्तम हवि प्रदान गर्ने सबै याजकहरूलाई रक्षा गर।

वयश्चित्ते पतत्रिणो द्विपच्चतुष्पदर्जुनि।
उषः प्रारन्नृतूँरनु दिवो अन्तेभ्यस्परि ॥३॥

हे देदीप्यमान उषादेवी ! तिमी उदाइसकेपछि जमिन तथा अन्तरिक्षका मानव र पशुपक्षीहरू टाढाटाढासम्म स्वेच्छापूर्वक विचरण गरेका देखिन्छन्।

व्युच्छन्ती हि रश्मिभिर्विश्वमाभासि रोचनम्।
तां त्वामुषर्वसूयवो गीर्भिः कण्वा अहूषत ॥४॥

हे उषादेवी ! उदित भएपछि तिमी आफ्ना किरणले सम्पूर्ण विश्व प्रकाशित गर्दछ्यौ। धनको कामना गर्ने कण्वका वंशजहरू तिम्रो आह्वान गर्दछन्।

[सूक्त – ५०]

ऋषि – प्रस्कण्व काण्व। देवता – सूर्य। छन्द – गायत्री अनुष्टुप्।

उदु त्यं जातवेदसं देवं वहन्ति केतवः। दृशे विश्वाय सूर्यम् ॥१॥

सम्पूर्ण प्राणीका ज्ञाता सूर्यदेवले समस्त विश्वलाई दृष्टि प्रदान गर्नका लागि ज्योतिर्मयी रश्मिहरू विशेष रूपले प्रकाशित भएका छन्।

अप त्ये तायवो यथा नक्षत्रा यन्त्यक्तुभिः। सूराय विश्वचक्षसे ॥२॥

सबैलाई प्रकाश दिने सूर्यदेव उदाउना साथ रात्रि र ताराको समूह चोर लुकेझैं लुक्छन्।

अदृश्रमस्य केतवो वि रश्मयो जनाँ अनु। भ्राजन्तो अग्नयो यथा ॥३॥

प्रज्वलित अग्निको किरणझैं, सूर्यदेवका प्रकाशले सम्पूर्ण प्राणीजगत्लाई प्रकट गर्दछ।

तरणिर्विश्वदर्शतो ज्योतिष्कृदसि सूर्य। विश्वमा भासि रोचनम् ॥४॥

हे सूर्यदेव ! तिमी साधकहरूको उद्धार गर्ने, समस्त संसारका एक मात्र दर्शनीय प्रकाशक हौ। तिमीले नै विस्तृत अन्तरिक्षलाई चारै तिरबाट प्रकाशित गरेका छौ।

प्रत्यङ् देवानां विशः प्रत्यङ्ङुदेषि मानुषान्। प्रत्यङ् विश्वं स्वर्दृशे ॥५॥

हे सूर्यदेव ! तीनै लोकका निवासीले तिम्रो दर्शन गर्न सकून् भनी मरुत्गण, देवगण, मनुष्य र स्वर्गलोकका बासिन्दाहरूका अगाडि तिमी नियमित रूपले उदाउँछौ।

येना पावक चक्षसा भुरण्यन्तं जनाँ अनु। त्वं वरुण पश्यसि ॥६॥

जुन दृष्टि वा प्रकाशले तिमी प्राणीहरूलाई धारणपोषण गर्ने यस संसारलाई प्रकाशित गर्दछौ, हामी तिम्रा त्यसै प्रकाशलाई स्तुति गर्दछौं।

वि द्यामेषि रजस्पृथ्वहा मिमानो अक्तुभिः। पश्यञ्जन्मानि सूर्य ॥७॥

हे सूर्यदेव ! तिमी दिन र रातका रूपमा समयलाई विभाजन गर्दै अन्तरिक्ष तथा द्युलोकमा विचरण गर्दछौ। त्यसो हुनाले सबै प्राणीलाई तिमीबाट लाभ प्राप्त हुन्छ।

सप्त त्वा हरितो रथे वहन्ति देव सूर्य। शोचिष्केशं विचक्षण ॥८॥

हे सर्वद्रष्टा सूर्यदेव ! तेजस्वी ज्वालाहरूले युक्त दिव्यता तिमीले धारण गरेका हुनाले तिम्रा सप्तरङ्गी किरणरूपी अश्वहरूको रथ पनि सुशोभित भएको छ।

अयुक्त सप्त शुन्ध्युवः सूरो रथस्य नप्त्यः। ताभिर्याति स्वयुक्तिभिः ॥९॥

पवित्रता प्रदान गर्ने, ज्ञानसम्पन्न, ऊर्ध्वगामी सूर्यदेव सप्तरङ्गी किरणरूपी अश्वहरूले सजिएका रथमा विराजमान हुन्छन्।

उद्वयं तमसस्परि ज्योतिष्पश्यन्त उत्तरम्।
देवं देवत्रा सूर्यमगन्म ज्योतिरुत्तमम् ॥१०॥

अन्धकार हटाउने श्रेष्ठतम ज्योतिलाई हामीले देखेका छौं। उनै ज्योतिस्वरूप र देवताहरूमा उत्कृष्टतम ज्योतिर्पुञ्ज सूर्यमा हामी पुग्न सकौं।

उद्यन्नद्य मित्रमह आरोहन्नुत्तरां दिवम्।
हृद्रोगं मम सूर्य हरिमाणं च नाशय ॥११॥

हे मित्रहरूका मित्र सूर्यदेव ! तिमी आकाशमा उदाएर हृदयको रोग र शरीरको कान्ति नष्ट गर्ने अन्य रोगहरूलाई पनि नष्ट गरिदेऊ।

शुकेषु मे हरिमाणं रोपणाकासु दध्मसि।
अथो हारिद्रवेषु मे हरिमाणं नि दध्मसि ॥१२॥

हामी आफूमा उत्पन्न हुने सुकाउने रोगहरू सुगा, रुख र हरिया वनस्पतिमा लगेर जिम्मा लगाउँछौं।

उदगादयमादित्यो विश्वेन सहसा सह।
द्विषन्तं मह्यं रन्धयन्मो अहं द्विषते रधम् ॥१३॥

हे सूर्यदेव ! आफ्नो सम्पूर्ण तेजका साथ उदाएर हाम्रा सबै रोगहरू नियन्त्रण गर। हामी ती रोगहरूका नियन्त्रणमा कहिल्यै नपरौं।

[सूक्त - ५१]

ऋषि - सव्य आङ्गिरस। देवता - इन्द्र। छन्द - जगती त्रिष्टुप्।

अभि त्यं मेषं पुरुहूतमृग्मियमिन्द्रं गीर्भिर्मदता वस्वो अर्णवम्।
यस्य द्यावो न विचरन्ति मानुषा भुजे मंहिष्ठमभि विप्रमर्चत ॥१॥

हे याजकहरू हो ! शत्रुलाई पराजित गर्ने, अनेकौंबाट प्रशंसित, वैदिक ऋचाहरूले स्तुति गरिन योग्य, धनका सागर इन्द्रदेवलाई प्रार्थना गर। जसका वरिपरि द्युलोकजस्तै विस्तृत कल्याणकारी कार्यहरू व्याप्त छन्, त्यस्ता ज्ञानवान् इन्द्रदेवलाई सुख प्राप्तिका लागि अर्चना गर।

अभीमवन्वन्त्स्वभिष्टिमूतयोऽन्तरिक्षप्रां तविषीभिरावृतम्।
इन्द्रं दक्षास ऋभवो मदच्युतं शतक्रतुं जवनी सूनृतारुहत् ॥२॥

सहायता गर्ने काममा सिपालु मरुत्देवहरूले शत्रुको घमन्ड चुर गराउने सयौं काम गर्न सक्ने, खोजेको पुऱ्याइदिने, अन्तरिक्षलाई तेजले सम्पन्न पार्ने र अत्यन्त बलिया इन्द्रदेवलाई स्तुति गरे। देवताहरूका मधुर वाणीले इन्द्रदेवको उत्साह वृद्धि भयो।

त्वं गोत्रमङ्गिरोभ्योऽवृणोरपोतात्रये शतदुरेषु गातुवित्।
ससेन चिद्विमदायावहो वस्वाजावद्रिं वावसानस्य नर्तयन् ॥३॥

हे इन्द्रदेव ! तिमीले अङ्गिरा ऋषिका लागि गाईको बथान छोड्यौ। अत्रि ऋषिका लागि सय ढोका भएको गुफाबाट बाहिर निस्कने बाटो ठम्याइदियौ। विमद ऋषिका लागि अन्नले भरिएको धन प्राप्त गरायौ र युद्धमा वज्रले संसारको रक्षा गर्‍यौ। त्यसो हुँदा तिम्रा महिमाको वर्णन कसले गर्न सक्ला र ?

त्वमपामपिधानाऽवृणोरपाधारयः पर्वते दानुमद्वसु।
वृत्रं यदिन्द्र शवसावधीरहिमादित्सूर्यं दिव्यारोहयो दृशे ॥४॥

हे इन्द्रदेव ! आकाशमा स्पष्ट रूपले दृष्टिगत भएर प्रकाशित हुन सकौं भनी तिमीले जल भरिएका मेघलाई मुक्त गरायौ। पर्वतमा रहेका दस्यु वृत्रबाट धन लियौ। आफ्ना बलले वृत्र र अहिरूप मेघलाई भत्कायौ।

त्वं मायाभिरप मायिनोऽधमः स्वधाभिर्ये अधि शुप्तावजुह्वत।
त्वं पिप्रोर्नृमणः प्रारुजः पुरः प्र ऋजिश्वानं दस्युहत्येष्वाविथ ॥५॥

हे इन्द्रदेव ! जुन राक्षसले यज्ञको हवि आफ्ना मुखमा हाल्दथे, ती प्रपञ्चीहरूलाई तिमीले आफ्नो मायाद्वारा मारिदियौ। हे मनुष्यहरूबाट स्तुति गरिने इन्द्रदेव ! तिमीले आफ्नो मात्रै पेट भर्ने पिप्रु नामका राक्षसको सहर ध्वस्त गर्‍यौ र युद्धमा राक्षसहरूलाई विनाश गरेर ऋजिश्वा नामका ऋषिको रक्षा गर्‍यौ।

त्वं कुत्सं शुष्णहत्येष्वाविथारन्धयोऽतिथिग्वाय शम्बरम्।
महान्तं चिदर्बुदं नि क्रमीः पदा सनादेव दस्युहत्याय जज्ञिषे ॥६॥

हे इन्द्रदेव ! तिमीले युद्धमा शुष्णलाई नाश गरेर कुत्सलाई रक्षा गर्‍यौ। अतिथिग्व ऋषिलाई सहायता गर्नका लागि शम्बासुरलाई पराजित गर्‍यौ। महान् बलशाली अर्बुदलाई गोडाले कुल्चियौ। असुर नाश गर्नका लागि नै उत्पन्न भएका हौ।

त्वे विश्वा तविषी सध्र्यग्घिता तव राधः सोमपीथाय हर्षते।
तव वज्रश्चिकिते बाह्वोर्हितो वृश्चा शत्रोरव विश्वानि वृष्ण्या ॥७॥

हे इन्द्रदेव ! तिमीमा सबै किसिमका बल समाविष्ट छन्। तिम्रो मन सोमपान गर्नका लागि सधैं उत्साहित रहन्छ। तिमीले बाहुमा धारण गरेको वज्र सर्वत्र प्रसिद्ध छ। त्यसै वज्रले तिमी शत्रुहरूको सम्पूर्ण बल नाश गर्दछौ।

वि जानीह्यार्यान्ये च दस्यवो बर्हिष्मते रन्धया शासदव्रतान्।
शाकी भव यजमानस्य चोदिता विश्वेत्ता ते सधमादेषु चाकन ॥८॥

हे इन्द्रदेव ! तिमी आर्यहरूलाई चिन र अनार्यहरूलाई पनि चिन। व्रतहीनहरूलाई अधीनमा राख र यज्ञ गर्नेहरूको हितका लागि तिनलाई नाश गरिदेऊ। हे सामर्थ्यवान् इन्द्रदेव ! तिमी सबै यज्ञमा यजमानलाई प्रेरणा प्रदान गर भन्ने हामी चाहन्छौं।

अनुव्रताय रन्धयन्नपव्रतानाभूभिरिन्द्रः श्नथयन्ननाभुवः।
वृद्धस्य चिद्वर्धतो द्यामिनक्षतः स्तवानो वम्रो वि जघान संदिहः ॥९॥

इन्द्रदेव व्रतवान्का लागि व्रतहीनलाई प्रताडित गर्दछन् र आस्तिकका लागि नास्तिक विनाश गर्दछन्। उनी द्युलोकमा क्षति गर्ने असुर मार्ने प्राचीन पुरुष इन्द्रदेवको बढ्दो यशलाई वम्र ऋषिले स्तुति गरे।

तक्षद्यत्त उशना सहसा सहो वि रोदसी मज्मना बाधते शवः।
आ त्वा वातस्य नृमणो मनोयुज आ पूर्यमाणामवहन्नभि श्रवः ॥१०॥

हे इन्द्रदेव ! उशना ऋषिले स्तुतिगरेर तिम्रो बल तीव्र बनाए। तिम्रो प्रचण्ड बलका कारण द्युलोक र पृथ्वी भयमुक्त भए। मनुष्यबाट स्तुति गरिने हे इन्द्रदेव ! मन गर्नासाथ रथमा जारिने अश्वमा तिमी आएर हामीलाई अन्न र यशले परिपूर्ण गराऊ।

मन्दिष्ट यदुशने काव्ये सचाँ इन्द्रो वङ्कू वङ्कुतराधि तिष्ठति।
उग्रो ययिं निरपः स्रोतसासृजद्वि शुष्णस्य दृंहिता ऐरयत्पुरः ॥११॥

उशनाका स्तुतिले प्रसन्न भएर इन्द्रदेव अति वेगवान् अश्वमाथि आरूढ भए। त्यसपछि मेघबाट जल बगाइदिए र शुष्ण असुरको बलिया सहरहरूलाई ध्वस्त गराए।

**आस्मा रथं वृषपाणेषु तिष्ठसि शार्यातस्य प्रभृता येषु मन्दसे।**
**इन्द्र यथा सुतसोमेषु चाकनोऽनर्वाणं श्लोकमा रोहसे दिवि ॥१२॥**

हे इन्द्रदेव ! तिमी सोमरस पान गर्नका लागि रथमा बसेर जान्छौ। जुन सोमरसले तिमी प्रसन्न हुन्छौ, त्यो शर्य्यातका परक्रमबाट उत्पन्न हुन्छ। जस्ता सोमयज्ञको कामना तिमी गर्दछौ तिम्रो यश उस्तै किसिमले उज्ज्वल रूपमा वृद्धि हुने गर्दछ।

**अददा अर्भां महते वचस्यवे कक्षीवते वृचयामिन्द्र सुन्वते।**
**मेनाभवो वृषणश्वस्य सुक्रतो विश्वेत्ता ते सवनेषु प्रवाच्या ॥१३॥**

हे इन्द्रदेव ! राम्रो किसिमले स्तुति गर्ने र सोम तयार गर्ने कक्षीवान् राजाका लागि तिमीले ज्यादा व्याख्याविवेचना नगरीकन सजिलै बुझिने विद्याहरू प्रकट गर्‍यौ। हे उत्तम कर्मशील इन्द्रदेव ! तिमीले वृषणश्व राजाका लागि प्रेरणादायक वाणी प्रकट गर्‍यौ। तिम्रा यी सबै कार्यहरू सोम यज्ञमा वर्णनयोग्य छन्।

**इन्द्रो अश्रायि सुध्यो निरेके पज्रेषु स्तोमो दुर्यो न यूपः।**
**अश्वयुर्गव्यू रथयुर्वसूयुरिन्द्र इद्रायः क्षयित प्रयन्ता ॥१४॥**

निराश्रित व्यक्तिहरूका लागि एक मात्र आश्रयदाता इन्द्रदेव नै हुन्। इन्द्रदेवलाई गरिएको स्तुति दलिनलाई थामेको खम्बाजस्तै निरन्तर रूपमा स्थिर रहन्छ। अश्व, गाई, रथ र धनका शासक इन्द्रदेव नै प्रजाले खोजेको ऐश्वर्य प्रदान गर्दछन्।

**इदं नमो वृषभाय स्वराजे सत्यशुष्माय तवसेऽवाचि।**
**अस्मिन्निन्द्र वृजने सर्ववीराः स्मत्सूरिभिस्तव शर्मन्त्स्याम ॥१५॥**

बलशाली, स्वयं प्रकाशित, सत्यरूप, सामर्थ्यशाली, श्रेष्ठ इन्द्रदेवलाई स्तुतिका साथ हामी अभिवादन गर्दछौं। हे इन्द्रदेव ! हामी सबै जना यस सङ्ग्राममा शूरवीरहरूका साथ रहने तिम्रै आश्रयमा उपस्थित छौं।

## [सूक्त - ५२]

**ऋषि** – सव्य आङ्गिरस। **देवता** – इन्द्र। **छन्द** – जगती त्रिष्टुप्।

**त्यं सु मेषं महया स्वर्विदं शतं यस्य सुभ्वः साकमीरते।**
**अत्यं न वाजं हवनस्यदं रथमेन्द्रं ववृत्यामवसे सुवृक्तिभिः ॥१ ॥**

हे अध्वर्यु ! शत्रुसित प्रतिस्पर्धा गर्ने र धन दान गर्ने उचित स्थानमा जाने इन्द्रदेवको पूजन विधिवत् गर। हामी आफ्नो रक्षाका लागि अश्वजत्तिकै छिटो यज्ञमा पुग्ने इन्द्रदेवका यशको स्तुति गर्दै उनलाई रथतर्फ उन्मुख गराउँछौं।

**स पर्वतो न धरुणेष्वच्युतः सहस्रमूतिस्तविषीषु वावृधे।**
**इन्द्रो यद्वृत्रमवधीन्नदीवृतमुब्जन्नर्णांसि जर्हृषाणो अन्धसा ॥२॥**

सोमयुक्त हविष्यान्न पाएपछि हर्षित भएका इन्द्रदेवले जलप्रवाह रोक्ने वृत्रलाई मारेर पानीमा बगाए। जलप्रवाहलाई संरक्षण प्रदान गर्नका लागि इन्द्रदेवले आफ्नो बल बढाए। त्यसपछि उनी पानीका बीचको पर्वतजत्तिकै अविचल बनेर स्थिर भए।

**स हि द्वरो द्वरिषु वव्र ऊधनि चन्द्रबुध्नो मदवृद्धो मनीषिभिः।**
**इन्द्र तमह्वे स्वपस्यया धिया मंहिष्ठरातिं स हि पप्रिरन्धसः ॥३॥**

इन्द्रदेव शत्रुहरूका लागि विकराल शत्रु नै हुन्। उनी आकाशमा व्याप्त आह्लादका रूप हुन्। इन्द्रदेव विद्वान्हरूले प्रदान गरेको सोमबाट उनले उन्नति गर्दछन्। महान् ऐश्वर्यदाता इन्द्रदेवलाई हविष्यान्नले सन्तुष्ट पार्न हामी उत्तम स्तुतिरूपी वाणीले बोलाउँछौं।

**आ यं पृणन्ति दिवि सद्मबर्हिषः समुद्रं न सुभ्वः स्वा अभिष्टयः।**
**तं वृत्रहत्ये अनु तस्थुरूतयः शुष्मा इन्द्रमवाता अह्रुतप्सवः ॥४॥**

नदीले समुद्रलाई जलपूर्ण गराएझैं कुशका आसनमा बसेका द्युलोक निवासी देवताहरूले इन्द्रदेवलाई सन्तुष्ट पारे। इन्द्रदेवले सजिलैसित वृत्रको वध गर्न लाग्दा मरुत्गणले आफूखुसी उनै बलवान्, संरक्षक, शत्रुरहित, शुभ्र कान्तियुक्त इन्द्रदेवलाई सहयोग गरे।

अभि स्ववृष्टिं मदे अस्य युध्यतो रघ्वीरिव प्रवणे सस्रुरूतयः ।
इन्द्रो यद्वज्री धृषमाणो अन्धसा भिनम्लस्य परिधींरिव त्रितः ॥५॥

उत्तम वर्षा हुन नदिने असुरसित युद्ध गर्नका लागि सोमपानले हर्षित भएका इन्द्रदेव तयार भए। संरक्षक मरुत्गण पनि नदीको प्रवाहझैं उनकै पक्षमा लागे। सोमबाट उन्नति गर्ने वज्रधारी इन्द्रदेवले त्यस असुरलाई बलपूर्वक मारेर द्यावापृथिवी र अन्तरिक्ष तीनै ठाउँका स्ि.नाहरू खुला गराए।

परी घृणा चरति तित्विषे शवोऽपो वृत्वी रजसो बुध्नमाशयत्।
वृत्रस्य यत्प्रवणे दुर्गृभिश्वनो निजघन्थ हन्वोरिन्द्र तन्यतुम् ॥६॥

वृत्रासुरले जल रोकेर अन्तरिक्षका गर्भमा सुतेको थियो। त्यस्ता बेलामा जललाई मुक्त गर्नका लागि हे इन्द्रदेव ! तिमीले कठिनतापूर्वक नियन्त्रणमा आउने वृत्रका थुतुनामा वज्रले प्रहार गर्‍यौ। यसबाट तिम्रो कीर्ति सर्वत्र फैलियो र बलको उन्नति भयो।

ह्रदं न हि त्वा न्यृषन्त्यूर्मयो ब्रह्माणीन्द्र तव यानि वर्धना।
त्वष्टा चित्ते युज्यं वावृधे शवस्ततक्ष वज्रमभिभूत्योजसम् ॥७॥

हे इन्द्रदेव ! जलले जलाशय प्राप्त गरेझैं हाम्रो मन्त्ररूपी स्तोत्र तिमीले प्राप्त गर्छौ। त्यस स्तोत्रले तिम्रो उन्नति गराउँछ। त्वष्टादेवले आफ्नो बल नियन्त्रण गरेर तिम्रो बल बढाए। त्यसपछि शत्रुलाई पराजित गर्नमा सहयोगी तिम्रो वज्र उध्याए।

जघन्वाँ उ हरिभिः संभृतक्रतविन्द्र वृत्रं मनुषे गातुयन्नपः।
अयच्छथा बाह्वोर्वज्रमायसमधारयो दिव्या सूर्यं दृशे ॥८॥

हे श्रेष्ठ कर्म सम्पादक इन्द्रदेव ! वज्र हातमा लिएर घोडामाथि चढेपछि तिमीले मनुष्यको हितका लागि वृत्रलाई मार्‍यौ र जलको मार्ग खोलिदियौ। त्यसपछि देख्न सकिने गरी सूर्यदेवलाई द्युलोकमा प्रतिष्ठित गरायौ।

बृहत्स्वश्चन्द्रममवद्यदुक्थ्य१मकृण्वत भियसा रोहणं दिवः।
यन्मानुषप्रधना इन्द्रमूतयः स्वनृषाचो मरुतोऽमदन्ननु ॥९॥

मानिसहरू वृत्रदेखि डराएका थिए। उनीहरूले इन्द्रदेवका लागि आनन्ददायक, बलप्रद, आह्लादक र स्वर्गीय उक्तिहरू रचना गरे। त्यसपछि मरुत्गणसित आएर उनीहरूले आफ्नो हितका निम्ति युद्ध गर्ने, आफ्ना निम्ति असल काम गर्ने, आकाशको रक्षा गर्ने इन्द्रदेवलाई सहायता गरे।

द्यौश्चिदस्यामवाँ अहेः स्वनादयोयवीद्भियसा वज्र इन्द्र ते।
वृत्रस्य यद्बद्बधानस्य रोदसी मदे सुतस्य शवसाभिनच्छिरः ॥१०॥

हे इन्द्रदेव ! सोमपानबाट प्राप्त गरेका हर्षका कारण तिमीले द्युलोक र पृथ्वीलाई दुःख दिने वृत्रको शिर वज्रका बलियो छ्प्काले काटिदियौ। त्यस बेला विशाल आकाश पनि वृत्रका विकराल शब्दले कम्पायमान भयो।

यदिन्विन्द्र पृथिवी दशभुजिरहानि विश्वा ततनन्त कृष्टयः।
अत्राह ते मघवन्विश्रुतं सहो द्यामनु शवसा बर्हणा भुवत् ॥११॥

हे इन्द्रदेव ! पृथ्वी दसौं गुना साधनहरूले सम्पन्न भएकाले मानिसहरूले दिनप्रतिदिन उन्नति गर्न लागे। त्यसपछि हे ऐश्वर्यशाली इन्द्रदेव ! तिम्रो बल र पराक्रम पनि पृथ्वीबाट द्युलोकसम्म सर्वत्र फैलिएर प्रसिद्ध होस्।

त्वमस्य पारे रजसो व्योमनः स्वभूत्योजा अवसे धृषन्मनः।
चकृषे भूमिं प्रतिमानमोजसोऽपः स्वः परिभूरेष्या दिवम् ॥१२॥

हे सङ्घर्षशील मन भएका इन्द्रदेव ! अन्तरिक्षभन्दा माथि रहे पनि तिमीले आफ्नो ज्योतिर्मय स्वरूप संरक्षण गर्नका लागि पृथ्वीको निर्माण गरेका हौ। अन्तरिक्ष र द्युलोकमा व्याप्त भएको बलको प्रतिमूर्तिजस्तो भएर स्वयं प्रतिष्ठित छौ।

त्वं भुवः प्रतिमानं पृथिव्या ऋष्ववीरस्य बृहतः पतिर्भूः।
विश्वमाप्रा अन्तरिक्षं महित्वा सत्यमद्धा नकिरन्यस्त्वावान् ॥१३॥

हे इन्द्रदेव ! तिमी विस्तृत भूमिका प्रतिरूप हौ। महान् बलले सम्पन्न व्यापक आकाश लोकका स्वामी तिमी नै हौ र आफ्नो महत्ताले सम्पूर्ण अन्तरिक्ष ढाक्दछौ। निश्चय नै तिमीजत्तिको अर्को कोही पनि छैन।

न यस्य द्यावापृथिवी अनु व्यचो न सिन्धवो रजसो अन्तमानशुः।
नोत स्ववृष्टिं मदे अस्य युध्यत एको अन्यच्चकृषे विश्वमानुषक् ॥१४

द्यावा र पृथिवीले तिम्रो विस्तार ठम्याउन सकेनन्, अन्तरिक्षको जलले तिम्रो अन्त्य ठम्याउन सकेन, उत्तम वर्षाको बाधक वृत्रसित युद्ध गर्दा तिम्रा उत्साहको तुलना गर्न सकिएन। हे इन्द्रदेव ! तिमी एक्लै नै सबैतिर व्याप्त भएका हुनाले अन्यान्य विश्वलाई पनि प्रकट गर्दछौ।

आर्चन्नत्र मरुतः सस्मिन्नाजौ विश्वे देवासो अमदन्नु त्वा।
वृत्रस्य यद्भृष्टिमता वधेन नि त्वमिन्द्र प्रत्यानं जघन्थ ॥१५॥

हे इन्द्रदेव ! वृत्रसितका युद्धमा सबै मरुतहरूले तिम्रो अर्चना गरे र सबै देवताहरूले तिमीलाई उत्साहित गराए। त्यस बेला तिमीले दुष्ट बुद्धि भएकाहरूलाई विनाश गर्ने वज्रले वृत्रका मुखैमा प्रहार गर्‍यौ।

[सूक्त - ५३]

ऋषि - सव्य आङ्गिरस। देवता - इन्द्र। छन्द - जगती त्रिष्टुप्।

न्यू३ षु वाचं प्र महे भरामहे गिर इन्द्राय सदने विवस्वतः।
नू चिद्धि रत्नं ससतामिवाविदन्न दुष्टुतिर्द्रविणोदेषु शस्यते ॥१॥

हामी विवस्वानका यज्ञमा उत्तम वचनले महान् इन्द्रदेवलाई स्तुति गर्दछौं। सुताहाको धन चोरले सजिलै चोरेझैं इन्द्रदेवले असुरको रत्नहरू प्राप्त गरे। धन दान गर्नेहरूको निन्दा गर्नु प्रशंसनीय काम होइन।

दुरो अश्वस्य दुर इन्द्र गोरसि दुरो यवस्य वसुन इनस्पतिः।
शिक्षानरः प्रदिवो अकामकर्शनः सखा सखिभ्यस्तमिदं गृणीमसि ॥२॥

हे इन्द्रदेव ! तिमी अश्व, गाई, धनधान्य आदिका दाता हौ। तिमी सबैलाई पालनपोषण गर्दै उत्तम कर्मका लागि प्रेरणा दिने तेजस्वी र वीर हौ। सङ्कल्प नष्ट हुन नदिई पालन गर्ने र मित्रका मित्र पनि तिमी नै हौ। हामी तिम्रो स्तुति यसै रितले गर्दछौं।

शचीव इन्द्र पुरुकृद्द्युमत्तम तवेदिदमभितश्चेकिते वसु।
अतः संगृभ्याभिभूत आ भर मा त्वायतो जरितुः काममूनयीः ॥३॥

शक्तिशाली, बहुकर्मा, दीप्तिमान् हे इन्द्रदेव ! सम्पूर्ण धन तिम्रै हो भन्ने कुरो सबैले जानेको छ। वृत्रलाई पराजित गर र उसका धनले हामीलाई भरिपूर्ण गराऊ। आफ्ना प्रशंसकहरूको कामना तिमीले अवश्य पूरा गर्नुपर्दछ।

एभिर्द्युभिः सुमना एभिरिन्दुभिर्निरुन्धानो अमतिं गोभिरश्विना।
इन्द्रेण दस्युं दरयन्त इन्दुभिर्युतद्वेषसः समिषा रभेमहि ॥४॥

तेजस्वी हवि र तेजस्वी सोमरसबाट तृप्त हुने हे इन्द्रदेव ! गाई र घोडाका साथै धन दिएर हाम्रो दरिद्रता निवारण गर। सोमरसले तृप्त हुने, उत्तम मन भएका इन्द्रदेवबाट शत्रु नाश गराउँदै हामी द्वेषरहित होऔं र अन्न प्राप्त गरी उचित रूपमा हर्षित होऔं।

समिन्द्र राया समिषा रभेमहि सं वाजेभिः पुरुश्चन्द्रैरभिद्युभिः।
सं देव्या प्रमत्या वीरशुष्मया गोअग्रयाश्वावत्या रभेमहि ॥५॥

हे इन्द्रदेव ! हामी धनधान्यले सम्पन्न होऔं, सबैलाई हर्ष बाँड्न सक्ने सम्पूर्ण तेजस्विता र बलसम्पन्न होऔं। हामी वीर सन्तान, श्रेष्ठ गाई र घोडा प्राप्त गर्न सक्ने उत्तम बुद्धिका होऔं।

ते त्वा मदा अमदन्तानि वृष्ण्या ते सोमासो वृत्रहत्येषु सत्पते।
यत्कारवे दश वृत्राण्यप्रति बर्हिष्मते नि सहस्राणि बर्हयः ॥६॥

हे सज्जनका पालक इन्द्रदेव ! वृत्रलाई मार्ने लडाइँमा तिमीले बलवर्द्धक सोमरस पान गरेर आनन्द र उत्साह प्राप्त गर्‍यौ। त्यसै बेला सङ्कल्प लिएर तिमीले याजकहरूको हितका लागि दस हजार असुर संहार गर्‍यौ।

युधा युधमुप घेदेषि धृष्णुया पुरा पुरं समिदं हंस्योजसा।
नम्या यदिन्द्र सख्या परावति निबर्हयो नमुचिं नाम मायिनम् ॥७॥

हे सङ्घर्षशील शक्तिले सम्पन्न इन्द्रदेव ! शत्रुपक्षका योद्धासित तिमी सधैं युद्ध गर्दछौ। शत्रुका

अनेकौं सहर तिमीले ध्वस्त पाऱ्यौ। मरुत्हरू तिम्रा विनयी र योग्य मित्र हुन्। तिनीहरूले प्रशंसा गरेका हुनाले तिमीले नमुचि नामका मायावी असुरलाई मारिदियौ।

**त्वं करञ्जमुत पर्णयं वधीस्तेजिष्ठ यातिथिग्वस्य वर्तनी।**
**त्वं शता वङ्गृदस्याभिनत्पुरोऽनानुदः परिषूता ऋजिश्वना ॥८॥**

हे इन्द्रदेव ! तिमीले अतिथिग्वलाई दुःख दिने करञ्ज र पर्णय नामका असुरलाई तेजस्वी अस्त्रले वध गऱ्यौ। कसैको सहायता नलिई वङ्गृदका सयौं सहर भत्कायौ र उसले वन्दी बनाइराखेका ऋजिश्वालाई मुक्त गरायौ।

**त्वमेताञ्जनराज्ञो द्विर्दशाबन्धुना सुश्रवसोपजग्मुषः।**
**षष्टिं सहस्रा नवतिं नव श्रुतो नि चक्रेण रथ्या दुष्पदावृणक् ॥९॥**

हे प्रसिद्ध इन्द्रदेव ! सुश्रवस राजाका आफन्त कोही थिएनन्। त्यस्ता एक्ला राजाका विपक्षमा लडाइँ गर्नका लागि बीस राजा र तिनीहरूका साठी हजार उनान्सय सैनिक आइलागेका थिए। तिमीले आफ्नो दुर्लभ चक्रले तिनीहरूलाई नष्ट गराइदियौ।

**त्वमाविथ सुश्रवसं तवोतिभिस्तव त्रामभिरिन्द्र तूर्वयाणम्।**
**त्वमस्मै कुत्समतिथिग्वमायुं महे राज्ञे यूनेअरन्धनायः ॥१०॥**

हे इन्द्रदेव ! तिमीले आफ्ना रक्षासाधनले सुश्रवसको र पोषण साधनले तूर्वयाणको रक्षा गऱ्यौ। तिमीले ती तरुण राजाको हित गर्नका लागि नै कुत्स, अतिथिग्व र आयु नामका राजाहरूलाई आफ्ना अधीनमा गरायौ।

**य उदृचीन्द्र देवगोपाः सखायस्ते शिवतमा असाम।**
**त्वां स्तोषाम त्वया सुवीरा द्राघीय आयुः प्रतरं दधानाः ॥११॥**

हे यज्ञमा स्तुति गरिने इन्द्रदेव ! तिमी देवताहरूबाट रक्षित छौ र हामी सबैका मित्र हौं। हामी सधैं सुखी रहौं। तिम्रा कृपाले हामी उत्तम बल र दीर्घायु पाउँछौं, त्यसैले तिम्रो स्तुति गर्दछौं।

## [सूक्त - ५४]

ऋषि - सव्य आङ्गिरस। देवता - इन्द्र। छन्द - जगती त्रिष्टुप्।

**मा नो अस्मिन्मघवन्पृत्स्वंहसि नहि ते अन्तः सवसः परीणशे।**
**अक्रन्दयो नद्यो३ रोरुवद्वना कथा न क्षोणीर्भियसा समारत ॥१॥**

जल र नदीलाई गतिशील बनाउने हे ऐश्वर्यशाली इन्द्रदेव ! तिमी महान् शक्तिले सम्पन्न छौ। हामीलाई युद्धबाट पर्न आउने दुःखबाट जोगाऊ र सबैलाई भयमुक्त गराऊ।

**अर्चा शक्राय शाकिने शचीवते शृण्वन्तमिन्द्रं महयन्नभि ष्टुहि।**
**यो धृष्णुना शवसा रोदसी उभे वृषा वृषत्वा वृषभो न्यृञ्जते ॥२॥**

हे मनुष्यहरू ! सर्वशक्तिमान् साधनहरूले सम्पन्न र तेजस्वी इन्द्रदेवलाई तिमीहरू पूजा गर। स्तुति सुनिदिने इन्द्रदेवको महिमा बयान गर। प्रचण्ड शक्तिले वर्षा गराउने इन्द्रदेव आफ्ना सामर्थ्यले सम्पन्न हुनाले सबैले खोजेका कुराको वर्षा गर्दछन्। आफ्ना बलले पृथ्वी र द्युलोकलाई सन्तुलित गर्दछन्।

**अर्चा दिवे बृहते शूष्यं१ वचः स्वक्षत्रं यस्य धृषतो धृषन्मनः।**
**बृहच्छ्रवा असुरो बर्हणा कृतः पुरो हरिभ्यां वृषभो रथो हि षः ॥३॥**

इन्द्रदेव शत्रुको विनाश गर्नका लागि शारीरिक एवं मानसिक शक्तिले सम्पन्न छन्। यस्ता तेजस्वी र महान् आत्मबल भएका इन्द्रदेवलाई आदरयुक्त वचनले पूजा गरौं। इन्द्रदेव महान् यशस्वी, प्राणशक्ति बढाउने, शत्रुनाशक, अश्व नारिएका रथमा हुन्छन्।

**त्वं दिवो बृहतः सानु कोपयोऽव त्मना धृषता शम्बरं भिनत्।**
**यन्मायिनो व्रन्दिनो मन्दिना धृषच्छितां गभस्तिमशनिं पृतन्यसि ॥४॥**

हे इन्द्रदेव ! उत्साहपूर्वक तीक्ष्ण वज्रले प्रहार गरेर तिमीले मायावी असुरको सैन्यदल नष्ट गरिदियौ। विशाल द्युलोकका उच्च स्थानलाई तिमी प्रकम्पित गराउँछौ र आफ्ना बलले शम्बर नामका असुरलाई मार्दछौ।

नि यद्वृणक्षि श्वसनस्य मूर्धनि शुष्णस्य चिद्व्रन्दिनो रोरुवद्वना।
प्राचीनेन मनसा बर्हणावता यदद्या चित्कृणवः कस्त्वा परि ॥५॥

हे इन्द्रदेव ! तिमीले गर्जनका साथ जलवर्षा गराउनका लागि जल शोषण गर्ने शुष्ण नामका असुरलाई वध गर्‍यौ। उहिलेदेखि आजसम्म तिमी उत्साहित मनले यस्तै काम गर्दै छौ। तिमीभन्दा माथि पुगेर तिमीलाई रोक्न सक्ने को छ र ?

त्वमाविथ नर्यं तुर्वशं यदुं त्वं तुर्वीतिं वय्यं शतक्रतो।
त्वं रथमेतशं कृत्व्ये धने त्वं पुरो नवतिं दम्भयो नव ॥६॥

सयौं यज्ञ आदि उत्तम कर्म सम्पन्न गरिसकेका हे इन्द्रदेव ! युद्धले उत्पन्न गरेका कठिन स्थितिमा तिमीले नर्य, तुर्वश, यदु, वय्य र तुर्वीतका वंशजहरूको रक्षा गर्‍यौ। तिमीले शत्रुका उनान्सय सहर ध्वस्त गराएर रथ र एतश नामका ऋषिहरूको रक्षा गर्‍यौ।

स घा राजा सत्पतिः शूशुवज्जनो रातहव्यः प्रति यः शासमिन्वति।
उक्था वा यो अभिगृणाति राधसा दानुरस्मा उपरा पिन्वते दिवः ॥७॥

सत्कर्मलाई प्रश्रय दिने र समृद्धिशाली राजाका शासनमा रहेकाहरू उत्तम हवि प्रदान गर्ने खालका हुन्छन्। उनीहरू हविष्यान्नका साथ उत्तम वचनले स्तुति गर्दछन्। उसै राज्यको हितका लागि दानशील इन्द्रदेव द्युलोकबाट मेघद्वारा वर्षा गराउँछन्।

असमं क्षत्रमसमा मनीषा प्र सोमपा अपसा सन्तु नेमे।
ये त इन्द्र ददुषो वर्धयन्ति महि क्षत्रं स्थविरं वृष्ण्यं च ॥८॥

हे सोमपान गर्ने इन्द्रदेव ! तिम्रा बलको, बुद्धिको र हर्षदायक कर्मको तुलना केहीसित गर्न सकिँदैन। हवि समर्पित गर्नका लागि मानिसहरूलाई तिमीले दिएका सहयोगले महान् पराक्रमको महत्त्व र सामर्थ्य बढाउँछ।

तुभ्येदेते बहुला अद्रिदुग्धाश्चमूषदश्चमसा इन्द्रपानाः।
व्यश्नुहि तर्पया काममेषामथा मनो वसुदेयाय कृष्व ॥९॥

हे इन्द्रदेव ! ढुङ्गामा कुटेर र छानेर धेरै किसिमका पात्रमा सोमरस राखिएको छ। यो सोमरस तिम्रै लागि हो। यो पिएर तिमी आफ्नो इच्छा पूर्ति गर। त्यसपछि उत्साहपूर्वक हामीलाई धन र वैभव प्रदान गर।

अपामतिष्ठद्धरुणह्वरं तमोऽन्तर्वृत्रस्य जठरेषु पर्वतः।
अभीमिन्द्रो नद्यो वव्रिणा हिता विश्वा अनुष्ठाः प्रवणेषु जिघ्नते ॥१०॥

जलको प्रवाह रोक्ने पर्वत रूपधारी वृत्रले आफ्ना पेटभित्र जललाई स्थिर गरायो। त्यसो भएपछि अन्धकार व्याप्त भयो। वृत्रद्वारा रोकिएको त्यो जलप्रवाह इन्द्रदेवले मुक्त गरेर तलतिर बगाइदिए।

स शेवृधमधि धा द्युम्नमस्मे महि क्षत्रं जनाषाडिन्द्र तव्यम्।
रक्षा च नो मघोनः पाहि सूरीन्राये च नः स्वपत्या इषे धाः ॥११॥

हे इन्द्रदेव ! हामीभित्र सुख, यश, सबैलाई शासन गर्ने राज्य र प्रशंसित सामर्थ्य तिमी स्थापित गराऊ। हाम्रा धनको रक्षा गर्दै हामीलाई उत्तम सन्तान र धेरै मात्रामा धनधान्य प्रदान गरेर ऐश्वर्यवान् बनाऊ।

## [सूक्त - ५५]

ऋषि - सव्य आङ्गिरस। देवता - इन्द्र। छन्द - जगती।

दिवश्चिदस्य वरिमा वि पप्रथ इन्द्रं न मह्ना पृथिवी चन प्रति।
भीमस्तुविष्माञ्चर्षणिभ्य आतपः शिशीते वज्रं तेजसे न वंसगः ॥१॥

इन्द्रदेवको महानता पृथ्वीदेखि द्युलोकसम्म व्याप्त छ। आफ्ना बलले उनलाई पराजित गर्न सक्ने कोही पनि छैन। शत्रुका लागि अत्यन्त विकराल हुनाले उनलाई देखेर बलवान् शत्रु पनि चिन्तित हुन्छ। जुध्नका लागि साँढेले आफ्ना सिंङ जसरी तिखार्दछ प्रहार गर्नका लागि इन्द्रदेव आफ्नो वज्र उसै किसिमले उध्याउँछन्।

सो अर्णवो न नद्यः समुद्रियः प्रति गृभ्णाति विश्रिता वरीमभिः।
इन्द्रः सोमस्य पीतये वृषायते सनात्स युध्म ओजसा पनस्यते ॥२॥

समुद्रले नदीहरूलाई जसरी आफूभित्र समेट्दछ, उसै गरी आफ्ना उत्कृष्टताले इन्द्रदेव अन्तरिक्षमा

व्याप्त रहेको जलप्रवाह धारण गर्दछन्। इन्द्रदेव सोम पिउने रहर ज्यादै गर्दछन्। उहिलेदेखि नै उनले युद्धमा सामर्थ्य र बलका विषयमा प्रशंसा पाएका छन्।

**त्वं तमिन्द्र पर्वत न भोजसे महो नृम्णस्य धर्मणामिरज्यसि।**
**प्र वीर्येण देवताति चेकिते विश्वस्मा उग्रः कर्मणे पुरोहितः ॥३॥**

हे इन्द्रदेव ! तिमीसित अति धेरै बल छ। बलका दृष्टिले तिमी पर्वतसमान अटल छौ। मेघजस्तो बलियो शत्रुलाई भत्काउँछौ र प्रजाले भोग गर्नका निम्ति त्यसको जल प्रदान गरेर शासन गर्दछौ। तिमी सबै काममा अग्रणी छौ र बलकै कारण देवताहरूमा श्रेष्ठ मानिएका छौ।

**स इद्वने नमस्युभिर्वचस्यते चारु जनेषु प्रब्रुवाण इन्द्रियम्।**
**वृषा छन्दुर्भवति हर्यतो वृषा क्षेमेण धेनां मघवा यदिन्वति ॥४॥**

आफ्नो सामर्थ्य प्रकट गर्ने, सुन्दर रूपका धनी र बलवान् इन्द्रदेव विनयशील मानिसहरूको स्तुति सुनेर प्रसन्न हुन्छन्। धनको कामना गर्नेहरूलाई उनी खोजेकै अनुसारका पदार्थहरू प्रदान गर्दछन्।

**स इन्महानि समिथानि मज्मना कृणोति युध्म ओजसा जनेभ्यः।**
**अधा चन श्रद्धति त्विषीमत इन्द्राय वज्रं निघनिघ्नते वधम् ॥५॥**

मनुष्यको हितका लागि आफ्ना महान् बलले वीर इन्द्रदेव ठूला युद्ध जित्दछन्। आफ्ना घातक वज्रले शत्रुको विनाश गर्दछन्। त्यसो भएर नै मानिसहरू तेजस्वी इन्द्रदेवका अगाडि श्रद्धाले झुक्दछन्।

**स हि श्रवस्युः सदनानि कृत्रिमा क्ष्मया वृधान ओजसा विनाशयन्।**
**ज्योतींषि कृण्वन्नवृकाणि यज्यवेऽव सुक्रतुः सर्तवा अपः सृजत् ॥६॥**

यशको इच्छा गरेर असल काममा लाग्ने इन्द्रदेव आफ्ना तेजस्वी बलले शत्रुको घर नष्ट गर्दै उन्नति गर्दछन्। उनले सूर्य आदि नक्षत्रको प्रकाश छेक्ने आवरण हटाए र याजकका लागि जलको प्रवाह खोलिदिए।

**दानाय मनः सोमपावन्नस्तु तेऽर्वाञ्चा हरी वन्दनश्रुदा कृधि।**
**यमिष्ठासः सारथयो य इन्द्र ते न त्वा के ता आ दभ्नुवन्ति भूर्णयः ॥७॥**

हे सोमपान गर्ने इन्द्रदेव ! तिम्रो मन दानमा लागोस्। तिमी हाम्रो स्तुति सुन्दछौ। आफ्ना अश्वहरू हाम्रा यज्ञतिर फर्काऊ। हे इन्द्रदेव ! तिम्रा सारथी रथ नियन्त्रण गर्ने काममा पूर्ण कुशल छन्। त्यसैले ठूलै बाधा आए पनि आत्तिँदैनन्।

**अप्रक्षितं वसु बिभर्षि हस्तयोरषाळ्हं सहस्तन्वि श्रुतो दधे।**
**आवृतासोऽवतासो न कर्तृभिस्तनूषु ते क्रतव इन्द्र भूरयः ॥८॥**

हे इन्द्रदेव ! तिमी आफ्ना दुवै हातमा अक्षय धन धारण गर्दछौ। तिम्रा शरीरमा प्रचण्ड बल रहेको छ। स्तुति गर्नेहरूले तिम्रा शरीरको वृद्धि गराएका छन्। मानिसले इनार छोपेझैं प्रसिद्ध कर्महरूले तिमी छेकिएका छौ।

## [सूक्त - ५६]

ऋषि - सव्य आङ्गिरस। देवता - इन्द्र। छन्द - जगती।

**एष प्र पूर्वीरव तस्य चम्रिषोऽत्यो न योषामुदयंस्त भुर्वणिः।**
**दक्षं महे पाययते हिरण्ययं रथमावृत्या हरियोगमृभ्वसम् ॥१॥**

संसारलाई पालनपोषण गर्ने इन्द्रदेव बहुसङ्ख्यक यजमानका सोमपात्र प्रसन्नतापूर्वक स्वीकार गर्दछन्। सुन्दर अश्वले तानिएको, दीप्तिमान, स्वर्णिम रथभित्र बसेका इन्द्रलाई यजमानहरू सोमपान गराउँछन्।

**तं गूर्तयो नेमन्निषः समुद्रं न संचरणे सनिष्यवः।**
**पतिं दक्षस्य विदथस्य नू सहो गिरिं न वेना अधि रोह तेजसा ॥२॥**

धनको इच्छा गर्नेहरू समुद्रतिर गएझैं हविदाता यजमान इन्द्रदेवतर्फ हवि लिएर लिएर हतारिँदै जान्छन्। हे स्तोता ! पहाडले बग्दै हिँडेका नदीको बाटो छेकेझैं तिम्रा स्तुतिले बलका स्वामी, यज्ञका स्वामी, सङ्घर्षका नायक महान् इन्द्रदेवलाई आफ्नै तेजले छेकेर आफूतर्फ आकर्षित गर्दछ।

स तुर्वणिर्महाँ अरेणु पौंस्ये गिरेर्भृष्टिर्न भ्राजते तुजा शवः ।
येन शुष्णं मायिनमायसो मदे दुध्र आभूषु रामयन्नि दामनि ॥३॥

महान् इन्द्रदेवले शत्रु नाश गर्नका लागि जङ्गी कवच धारण गरेका छन्। शुष्ण नामका मायावी असुरलाई डोरीले बाँधेर तिनले भयालखानमा राखेका छन्। उनको निन्दारहित बल सङ्ग्राममा पर्वतको शिखरजस्तै स्पष्ट देखिएको छ।

देवी यदि तविषी त्वावृधोतय इन्द्रं सिषक्त्युषसं न सूर्यः ।
यो धृष्णुना शवसा बाधते तम इयर्ति रेणुं बृहदर्हरिष्वणिः ॥४॥

हे स्तोता ! सूर्यदेवले उषादेवीलाई प्राप्त गरेझैं आफ्ना स्तुतिबाट मनग्गे बल भएका इन्द्रदेवलाई प्राप्त गर्न सक्छौ। उनले आफ्ना सङ्घर्षशील बलले दुष्कर्मरूपी अन्धकार हटाउँछन्। शत्रु रुवाउने इन्द्रदेवका सेनाले सङ्ग्राममा मनग्गे धुलो उडाउँछ।

वि यत्तिरो धरुणमच्युतं रजोऽतिष्ठिपो दिव आतासु बर्हणा।
स्वर्मीळ्हे यन्मद इन्द्र हर्ष्याहन्वृत्रं निरपामौब्जो अर्णवम् ॥५॥

हे इन्द्रदेव ! बादलले बोकेको जल तिमीले आकाशका विभिन्न दिशामा पुऱ्यायौ। सोमरसले हर्षित भएपछि सङ्घर्षशील बलले युद्ध गरेर वृत्रलाई माऱ्यौ। त्यसपछि वृत्रले थुनेर राखेको जल तलतिर बगाइदियौ।

त्वं दिवो धरुणं धिष ओजसा पृथिव्या इन्द्र सदनेषु माहिनः।
त्वं सुतस्य मदे अरिणा अपो वि वृत्रस्य समया पाष्यारुजः ॥६॥

हे इन्द्रदेव ! तिमीले आफ्ना महान् बलले अन्तरिक्षको जल पृथ्वीमा पुऱ्यायौ। तिमीले सोमरस पान गरेर उत्साहपूर्वक सङ्घर्षशील बलले वृत्रलाई माऱ्यौ। त्यसपछि पृथ्वीका सबै ठाउँलाई जलले सन्तुष्ट गरायौ।

[सूक्त - ५७]

ऋषि - सव्य आङ्गिरस। देवता - इन्द्र। छन्द - जगती।

प्र मंहिष्ठाय बृहते बृहद्रये सत्यशुष्माय तवसे मतिं भरे।
अपामिव प्रवणे यस्य दुर्धरं राधो विश्वायु शवसे अपावृतम् ॥१॥

अत्यन्त दानी, महान् ऐश्वर्यशाली, सत्यस्वरूप, पराक्रमी, इन्द्रदेवलाई हामी बुद्धिपूर्वक स्तुति गर्दछौ। ओरालोतिर बग्ने पानीको धारोजस्तै यिनको बल थाम्न कसैले सक्दैन। त्यस्ता बलले जुटाएका ऐश्वर्य मानिसलाई जीवनभर दिइरहने उनको नियम बनेको छ।

अध ते विश्वमनु हासदिष्टय आपो निम्नेव सवना हविष्मतः।
यत्पर्वते न समशीत हर्यत इन्द्रस्य वज्रः श्नथिता हिरण्ययः ॥२॥

हे इन्द्रदेव ! सुनझैं टल्कने तिम्रो घातक वज्र मेघलाई चिरा पार्न तयार भयो।,त्यस बेला हे इन्द्रदेव ! संसारले तिम्रा लागि यज्ञको काम गर्न लाग्यो। याजकले तिमीलाई समर्पित गरेको सोम ओरालोतिर पानी बगेझैं प्रवाहित भयो।

अस्मै भीमाय नमसा समध्वर उषो न शुभ्र आ भरा पनीयसे।
यस्य धाम श्रवसे नामेन्द्रियं ज्योतिरकारि हरितो नायसे ॥३॥

हे दीप्तिमती उषादेवी ! शत्रुप्रति विकराल हुनाले प्रशंसनीय इन्द्रदेवलाई नमस्कार गर्दै यज्ञ सम्पादन गराऊ। उनको स्थान अन्नका लागि अत्यन्त प्रसिद्ध छ। उनको सामर्थ्य र कीर्ति घोडा कुदेझैं सर्वत्र पुग्न सक्ने खालको छ।

इमे त इन्द्र ते वयं पुरुष्टुत ये त्वारभ्य चरामसि प्रभूवसो।
नहि त्वदन्यो गिर्वणो गिरः सघत्क्षोणीरिव प्रति नो हर्य तद्वचः ॥४॥

हे सम्पत्तिवान् र बहुप्रशंसित इन्द्रदेव ! हामी निष्ठापूर्वक तिम्रा संरक्षणमा रहेर कार्य गर्दछौं। तिमीजस्तो स्तुत्य देवता अन्य कोही छैन। त्यसो हुँदा हामी तिम्रै स्तुति गर्दछौं। पृथिवीले सबै खालका पदार्थ स्वीकार गरेझैं हाम्रो स्तोत्र तिमी पनि स्वीकार गर।

भूरि त इन्द्र वीर्य१ंतव स्मस्यस्य स्तोतुर्मघवन्काममा पृण।
अनु ते द्यौर्बृहती वीर्यं मम इयं च ते पृथिवी नेम ओजसे ॥५॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! यी साधकहरू स्तुति गर्दै छन्, यिनको कामना पूरा गराऊ। तिमी अत्यन्त बलवान् छौ। तिम्रै महान् बलले द्युलोक अडिएको छ र तिम्रा बलका अगाडि पृथ्वी पनि झुक्दछ।

त्वं तमिन्द्र पर्वतं महापुरं वज्रेण वज्रिन्पर्वशश्चकर्तिथ।
अवासृजो निवृताः सर्तवा अपः सत्रा विश्वं दधिषे केवलं सहः ॥६॥

हे वज्रधारी इन्द्रदेव ! अत्यन्त बलशाली मेघलाई तिमीले आफ्ना वज्रले टुक्राटुक्रा गरायौ र थुनिएका जलराशिलाई मुक्त गतिमा बगायौ। सबै खालका सङ्घर्ष शक्ति केवल तिमी नै धारण गर्दछौ भन्ने कुरो सत्य हो।

[सूक्त - ५८]

ऋषि - नोधा गौतम। देवता - अग्नि। छन्द - जगती त्रिष्टुप्।

नू चित्सहोजा अमृतो नि तुन्दते होता यद्दूतो अभवद्विवस्वतः।
वि साधिष्ठेभिः पथिभी रजो मम आ देवताता हविषा विवासति ॥१॥

बलले उत्पन्न गराइएका यी अमर अग्निदेव कहिल्यै दुःखदायी हुँदैनन् भन्ने निश्चित छ। यजमानको दूतका रूपमा यिनी सहायक छन्। आफ्नो उत्तम मार्गबाट अन्तरिक्षमा देखिँदै यिनी यात्रा गर्दछन्। अर्पण गरिएको हविष्यान्न देवताहरूसमक्ष पुऱ्याएर यिनले देवतालाई सम्मानित गर्दछन्।

आ स्वमद्म युवमानो अजरस्तृष्वविष्यन्नतसेषु तिष्ठति।
अत्यो न पृष्ठं प्रुषितस्य रोचते दिवो न सानु स्तनयन्नचिक्रदत् ॥२॥

कहिल्यै पुराना नहुने अग्निदेव, समिधाका साथ हवि भक्षण गर्दै दीप्तिमान् हुन्छन्। घिउले सेचन गरिएपछि माथितिर उठिरहेको यिनको ज्वालो सजिएको घोडाझैं सुन्दर देखिन्छ। आकाशमा रहने मेघको जस्तै गर्जन गर्दै यिनी उन्नतितर्फ लाग्दछन्।

क्राणा रुद्रेभिर्वसुभिः पुरोहितो होता निषत्तो रयिषाडमर्त्यः।
रथो न विक्ष्वृञ्जसान आयुषु व्यानुषग्वार्या देव ऋण्वति ॥३॥

यज्ञकर्म सम्पादन गर्नमा कुशल, रुद्र र वसुहरूले अगाडि लगाइएका, होताको रूपमा रहने, अविनाशी, धन प्रदान गर्ने र मनमा प्रतिष्ठा पाएका अग्निदेवलाई याजकहरू स्तुति गर्दछन्। रथजत्तिकै बढिरहेका अग्निदेवले याजकहरूको स्तुति पाएपछि प्रजाहरूलाई क्रमैसँग वरण गर्न योग्य र श्रेष्ठ धनले पूरा गराउँछन्।

वि वातजूतो अतसेषु तिष्ठते वृथा जुहूभिः सृण्या तुविष्वणिः।
तृषु यदग्ने वनिनो वृषायसे कृष्णं त एम रुशदूर्मे अजर ॥४॥

समिधाहरूमा प्रज्वलित अग्निदेवका तेजस्वी ज्वाला वायुका संयोगले शब्दायमान हुँदै सुशोभित भइरहेका छन्। हे अजर दीप्तिमान् अग्निदेव ! तिमी आफ्ना प्रखर शक्तिले वनलाई प्रभावित गर्दै कालो धुवाँका रूपमा [illegible] उठेर आफ्नो उपस्थिति जनाउँछौ।

तपुर्जम्भो वन आ वातचोदितो यूथे न साह्वाँ अव वाति वंसगः।
अभिव्रजन्नक्षितं पाजसा रजः स्थातुश्चरथं भयते पतत्रिणः ॥५॥

प्रज्वलित तेजस्वी ज्वालारूपी दाह्रा हुने अग्निदेव वायुबाट प्रेरित हुँदा गाईका बथानको स्वच्छन्द साँढेजस्तै भएर वनमा घुम्दछन्। अनन्त आकाशमा पक्षीझैं उनी घुमेका बेला स्थावरजङ्गम सबै भयभीत हुन्छन्।

दधुष्ट्वा भृगवो मानुषेष्वा रयिं न चारुं सुहवं जनेभ्यः।
होतारमग्ने अतिथिं वरेण्यं मित्रं न शेवं दिव्याय जन्मने ॥६॥

हे अग्निदेव ! सुख प्राप्तिका लागि मनुष्यद्वारा तिमीलाई आह्वान गरिन्छ। तिमी होता र अतिथिका रूप हौ। तिमी पूज्य र वरण गर्न योग्य छौ। तिमीलाई भृगुले देवत्व प्राप्तिका लागि मनुष्यका बीचमा स्थापित गरेका छन्। मित्रसमान सुखदाता र तेजस्वी हुनाले तिमी धनजत्तिकै सुन्दर रूपमा देखिन्छौ।

होतारं सप्त जुह्वो३यजिष्ठं यं वाघतो वृणते अध्वरेषु।
अग्निं विश्वेषामरतिं वसूनां सपर्यामि प्रयसा यामि रत्नम् ॥७॥

अग्निदेव यज्ञका श्रेष्ठ होता हुन्। उनलाई सात ऋत्विक् र सात होताहरूले आह्वान तथा वरण गर्दछन्। अग्निदेव सम्पूर्ण किसिमका धन प्रदान गर्दछन्। त्यसैले हामी उनलाई हविष्यान्न दिएर सेवा गर्दछौं र उनीसित रत्नको याचना गर्दछौं।

**अच्छिद्रा सूनो सहसो नो अद्य स्तोतृभ्यो मित्रमहः शर्म यच्छ।**
**अग्ने गृणन्तमंहस उरुष्योर्जो नपात्पूर्भिरायसीभिः ॥८॥**

हे अग्निदेव ! तिमी बलका पुत्र र श्रेष्ठ मित्ररूप हौ। आज हामी सबै स्तोतालाई श्रेष्ठ सुख प्रदान गर। बल क्षीण नगराउने हे अग्निदेव ! जसरी आफ्ना बलिष्ठ किल्लामा तिमी स्तोताहरूको रक्षा गरेका थियौ उसै गरी हामीलाई पापबाट पनि रक्षा गर।

**भवा वरूथं गृणते विभावो भवा मघवन्मघवद्भ्यः शर्म।**
**उरुष्याग्ने अंहसो गृणन्तं प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥९॥**

हे देदीप्यमान, ऐश्वर्यशाली अग्निदेव ! स्तोताका लागि तिमी आश्रयरूप हौ। धनी याजकलाई सुख प्रदान गर्दछौ। स्तोताहरूलाई पापबाट जोगाऊ। विचार पुऱ्याएर वैभव प्रदान गर्ने हे अग्निदेव ! तिमी विहानीका यज्ञमा चाँडै आऊ।

[सूक्त - ५९]

**ऋषि** - नोधो गौतम। **देवता** - अग्नि वैश्वानर। **छन्द** - त्रिष्टुप्।

**वया इदग्ने अग्नयस्ते अन्ये त्वे विश्वे अमृता मादयन्ते।**
**वैश्वानर नाभिरसि क्षितीनां स्थूणेव जनाँ उपमिद्ययन्थ ॥१॥**

हे अग्निदेव ! सबै अग्निहरू तिम्रा ज्वाला हुन्। सबै देवताहरू तिमीबाट आनन्द प्राप्त गर्दछन्। हे वैश्वानर ! तिमी सबै प्राणीहरूलाई पोषण गर्ने नाभी हौ। तिमी सबैका लागि मियोजस्तै आधार हौ।

**मूर्धा दिवो नाभिरग्निः पृथिव्या अथाभवदरती रोदस्योः।**
**तं त्वा देवासोऽजनयन्त देवं वैश्वानर ज्योतिरिदार्याय ॥२॥**

अग्निदेव आकाशका शिर र पृथ्वीका नाभी हुन्। यिनी आकाश र पृथ्वीका अधिपति पनि हुन्। यिनलाई अरू देवताहरूले प्रकट गर्दछन्। हे वैश्वानर अग्निदेव ! श्रेष्ठजनको हितका लागि तिमीले ज्योतिका रूपमा प्रकाश दिएका छौ।

**आ सूर्ये न रश्मयो ध्रुवासो वैश्वानरे दधिरेऽग्ना वसूनि।**
**या पर्वतेष्वोषधीष्वप्सु या मानुषेष्वसि तस्य राजा ॥३॥**

सूर्यदेवबाट सधैं प्रकाशका किरणहरू प्राप्त भएझैं वैश्वानर अग्निदेवबाट सबै खालका धन प्राप्त हुन्छन्। हे अग्निदेव ! तिमी सबै पर्वत, औषधी, जल र मानवहरूमा स्थित धनका राजा हौ।

**बृहती इव सूनवे रोदसी गिरो होता मनुष्यो३न दक्षः।**
**स्वर्वते सत्यशुष्माय पूर्वीर्वैश्वानराय नृतमाय यह्वीः ॥४॥**

गर्भबाट पुत्र प्राप्त गरेझैं वैश्वानर अग्निदेवलाई बृहत् रूपमा द्यावापृथिवीले प्राप्त गरेका छन्। अग्निदेव मनुष्यभन्दा श्रेष्ठ होता हुन्। प्रकाशित र सत्य बलयुक्त वैश्वानर नामका अग्निलाई पुरातन स्तुतिहरूले स्तोताहरू गायन गर्दछन्।

**दिवश्चित्ते बृहतो जातवेदो वैश्वानर प्र रिरिचे महित्वम्।**
**राजा कृष्टीनामसि मानुषीणां युधा देवेभ्यो वरिवश्चकर्थ ॥५॥**

हे प्राणीहरूका ज्ञाता, मनुष्यमा व्याप्त अग्निदेव ! तिम्रो महिमा द्युलोकभन्दा पनि बढी व्यापक छ। तिमी सम्पूर्ण मानवका अधिपति हौ। हाम्रो सङ्घर्षशील जीवन तिमी दैवी सम्पदाहरूले परिपूर्ण गराइदेऊ।

**प्र नू महित्वं वृषभस्य वोचं यं पूरवो वृत्रहणं सचन्ते।**
**वैश्वानरो दस्युमग्निर्जघन्वाँ अधूनोत्काष्ठा अव शम्बरं भेत् ॥६॥**

हामी बलवान् अग्निदेवको महत्त्व बयान गर्दछौं। वैश्वानर अग्निदेव जलका चारैतिर रहेर वृत्रको वध गर्दछन्। सबै मनुष्यले वृत्रनाशक अग्निदेवको आश्रय लिएका छन्। दिशाहरू कम्पित गराउने अग्निदेवले शम्बर नामको असुर मार्दछन्।

**वैश्वानरो महिम्ना विश्वकृष्टिर्भरद्वाजेषु यजतो विभावा।**
**शातवनेये शतिनीभिरग्निः पुरुणीथे जरते सूनृतावान् ॥७॥**

वैश्वानर अग्निदेव आफ्नै महिमाले गर्दा मानिसहरूका स्वामी भएका हुन्। उनी अन्न दान गर्नेहरूमा अति पूजनीय र वैभवशाली मानिन्छन्। शतवनका पुत्र पुरुनीथका यज्ञमा सत्यवान्ले अग्निदेवलाई सयौं स्तोत्रहरूले स्तुति गर्दछन्।

[सूक्त - ६०]

ऋषि – नोधा गौतम। देवता – अग्नि। छन्द – त्रिष्टुप्।

**वह्निं यशसं विदथस्य केतुं सुप्राव्यं दूतं सद्योअर्थम्।**
**द्विजन्मानं रयिमिव प्रशस्तं रातिं भरद्भृगवे मातरिश्वा ॥१॥**

हविवाहक, यशस्वी, यज्ञपताकासदृश, उत्तम रक्षक, शीघ्र धनप्रदायक, देवताहरूसम्म हवि पुऱ्याउने, द्विज, धनसरह प्रशंसित अग्निदेवलाई वायुदेवले भृगुको मित्र बनाए।

**अस्य शासुरुभयासः सचन्ते हविष्मन्त उशिजो ये च मर्ताः।**
**दिवश्चित्पूर्वो न्यसादि होतापृच्छ्यो विश्पतिर्विक्षु वेधाः ॥२॥**

समुन्नत जीवन निर्वाह गर्ने र सामान्य जीवन निर्वाह गर्ने दुवै खालका मानिसहरू देवताहरूलाई हवि समर्पित गर्ने अग्निदेवकै शासनमा रहन्छन्। पूजनीय, जलवर्षक, प्रजापालक, होतारूप अग्निदेव सूर्योदयभन्दा पहिले नै प्रकट हुन्छन्।

**तं नव्यसी हृद आ जायमानमस्मत्सुकीर्तिर्मधुजिह्वमश्याः।**
**यमृत्विजो वृजने मानुषासः प्रयस्वन्त आयवो जीजनन्त ॥३॥**

जीवनसङ्ग्राममा विजयी हुँदै उन्नतिको आकाङ्क्षा गर्ने मानिसले जुन अग्निदेवलाई उत्पन्न गर्दछन्, ती अग्निदेव प्रत्येकका हृदयमा विराजमान छन्। मधुर वाणी भएका, उत्तम, यशस्वी अग्निदेवलाई हाम्रा नवीन स्तुतिहरू प्राप्त होऊन्।

**उशिक्पावको वसुर्मानुषेषु वरेण्यो होताधायि विक्षु।**
**दमूना गृहपतिर्दम आँ अग्निर्भुवद्रयिपती रयीणाम् ॥४॥**

याजकहरू धनवैभव प्राप्त गर्ने विचारले पवित्रता प्रदान गर्ने अग्निदेवलाई होताका रूपमा वरण गरिन्छन्। दोषहरू दमन गर्ने, गृहपालक, श्रेष्ठ ऐश्वर्यका स्वामी अग्निदेव यज्ञका वेदीमाथि स्थापित गरिन्छन्।

**तं त्वा वयं पतिमग्ने रयीणां प्र शंसामो मतिभिर्गोतमासः।**
**आशुं न वाजम्भरं मर्जयन्तः प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥५॥**

हे अग्निदेव ! हामी गौतमका वंशजहरू आफ्ना बुद्धिले तिम्रो प्रशंसा गर्दछौँ। अन्न दिने, पवित्र गर्ने, अश्वजस्तै बलसम्पन्न तिमीले हामीलाई धन प्राप्त गर्ने कौशल प्रदान गर र प्रातःकाल शीघ्र आइदेऊ।

[सूक्त - ६१]

ऋषि – नोधा गौतम। देवता – अग्नि। छन्द – त्रिष्टुप्।

**अस्मा इदु प्र तवसे तुराय प्रयो न हर्मि स्तोमं माहिनाय।**
**ऋचीषमायाध्रिगव ओहमिन्द्राय ब्रह्माणि राततमा ॥१॥**

शीघ्र कार्य गर्ने, मन्त्रहरूद्वारा वर्णनीय, महान् कीर्ति भएका, निर्बाध गति भएका इन्द्रदेवका लागि हामी प्रशंसात्मक मन्त्रको गान गर्दै हविष्यान्न अर्पित गर्दछौँ।

**अस्मा इदु प्रय इव प्र यंसि भराम्याङ्गूषं बाधे सुवृक्ति।**
**इन्द्राय हृदा मनसा मनीषा प्रत्नाय पत्ये धियो मर्जयन्त ॥२॥**

हामी इन्द्रदेवका निम्ति हविष्य अर्पण गरेजस्तै स्तोत्र पनि अर्पित गर्दछौँ। शत्रुनाशक इन्द्रदेवका लागि हामी उत्तम स्तुति गान गर्दछौँ। उनै पुरातन इन्द्रदेवका लागि हृदय, मन र बुद्धि लगाएर ऋषिगण पवित्र स्तुति गर्दछन्।

**अस्मा इदु त्यमुपमं स्वर्षां भराम्याङ्गूषमास्येन।**
**मंहिष्ठमच्छोक्तिभिर्मतीनां सुवृक्तिभिः सूरिं वावृधध्यै ॥३॥**

महान् विद्वान् इन्द्रदेवलाई आकर्षित गर्नका लागि हामी उनकै महिमाअनुरूपको उत्तम स्तुति आफ्नै निर्मल बुद्धिले ठूलो स्वरमा उच्चारण गर्दछौँ।

**अस्मा इदु स्तोमं सं हिनोमि रथं न तष्टेव तत्सिनाय।**
**गिरश्च गिर्वाहसे सुवृक्तीन्द्राय विश्वमिन्वं मेधिराय ॥४॥**

त्वष्टादेवले रथ बनाएर इन्द्रदेवलाई दिएझैँ हामीहरू समस्त कामना सिद्ध गर्ने स्तुत्य, मेधावी इन्द्रदेवका लागि आफ्ना वाणीले सर्वप्रसिद्ध श्रेष्ठ स्तोत्र गाउँछौँ।

अस्मा इदु सप्तिमिव श्रवस्येन्द्रायार्कं जुह्वाऽसमञ्जे।
वीरं दानौकसं वन्दध्यै पुरां गूर्तश्रवसं दर्माणम् ॥५॥

धनको कामनाले रथमा अश्व नारेझैं इन्द्रदेवका निमित्त हामी आफ्ना वाणीमा स्तोत्र निबद्ध गर्दछौं। वीर, दानशील, विपुल यशस्वी, शत्रुका नगर ध्वस्त पार्ने इन्द्रदेवलाई हामी वन्दना गर्दछौं।

अस्मा इदु त्वष्टा तक्षद्वज्रं स्वपस्तमं स्वर्यं१ रणाय।
वृत्रस्य चिद्विदद्येन मर्म तुजन्नीशानस्तुजता कियेधाः ॥६॥

त्वष्टादेवले युद्धमा कुशलतापूर्वक लक्ष्यमा पुग्ने, शक्तिशाली वज्र इन्द्रदेवका लागि तयार गरिदिए। शत्रुनाशक, अति बलवान् इन्द्रदेवले उसै वज्रले वृत्रको मर्मस्थानमा प्रहार गरेर उसलाई मारिदिए।

अस्येदु मातुः सवनेषु सद्यो महः पितुं पपिवाञ्चार्वन्ना।
मुषायद्विष्णुः पचतं सहीयान्विध्यद्वराहं तिरो अद्रिमस्ता ॥७॥

आमाले सन्तानलाई स्याहारेझैं संसारलाई सजाउने, महान् इन्द्रदेवले यज्ञमा हवि सेवन र सोमरस पान चाँडै गरे। सर्वव्यापक इन्द्रदेवले शत्रुहरूको धन जिते र वज्र प्रहार गरेर मेघलाई भेदन गरे।

अस्मा इदु ग्नाश्चिद्देवपत्नीरिन्द्रायार्कमहिहत्य ऊवुः।
परि द्यावापृथिवी जभ्र उर्वी नास्य ते महिमानं परि ष्टः ॥८॥

इन्द्रदेवको अहि नामको शत्रु मार्दा देवपत्नीले स्तुति गरे। इन्द्रदेवले फेरि पृथिवी र द्युलोक आफ्नो अधीनमा पारे। यी दुवै लोकमा उनका सामर्थ्यका अगाडि कोही पनि अडिन सक्दैन।

अस्येदेव प्र रिरिचे महित्वं दिवस्पृथिव्याः पर्यन्तरिक्षात्।
स्वराळिन्द्रो दम आ विश्वगूर्तः स्वरिरमत्रो ववक्षेरणाय ॥९॥

इन्द्रदेवको महानता आकाश, पृथ्वी र अन्तरिक्षभन्दा पनि विस्तृत छ। स्वयं प्रकाशित, सर्वप्रिय, उत्तम योद्धा, असीमित बलशाली, इन्द्रदेव युद्धका लागि आफ्ना वीरहरूलाई प्रेरित गर्दछन्।

अस्येदेव शवसा शुषन्तं वि वृश्चद्वज्रेण वृत्रमिन्द्रः।
गा न व्राणा अवनीरमुञ्चदभि श्रवो दावने सचेताः ॥१०॥

इन्द्रदेवले आफ्ना वज्रका बलले शोषक वृत्रलाई काटिदिए र अपहरण गरिएका गाई थुनिएझैं रोकिएको जल मुक्त गराए। हविदाताहरूलाई अन्नले परिपूर्ण बनाए।

अस्येदु त्वेषसा रन्त सिन्धवः परि यद्वज्रेण सीमयच्छत्।
ईशानकृद्दाशुषे दशस्यन्तुर्वीतये गाधं तुर्वणिः कः ॥११॥

इन्द्रदेवकै बलले नदीहरू प्रवाहित भए, किनभने इन्द्रले नै आफ्ना वज्रले नदीहरूलाई मर्यादित गराइदिए। शत्रुलाई मारेर सबैमाथि शासन गर्ने इन्द्रदेव हविदातालाई धन दिँदै तुर्वणि अर्थात् शत्रुका विरुद्धमा मोर्चा बनाउनेहरूको सहायता गर्दछन्।

अस्मा इदु प्र भरा तूतुजानो वृत्राय वज्रमीशानः कियेधाः।
गोर्न पर्व वि रदा तिरश्चेष्यन्नर्णांस्यपां चरध्यै ॥१२॥

हे इन्द्रदेव ! तिमी अति वेगवान्, सबका स्वामी, महाबली हौ। वृत्रमाथि वज्रले प्रहार गर र तेर्छो प्रहार गरेर यसको बल सिध्याइदेऊ यसलाई काटेर भूमिमा मिलाऊ। यति गरेर जललाई मुक्त रूपमा प्रवाहित गराऊ।

अस्येदु प्र ब्रूहि पूर्व्याणि तुरस्य कर्माणि नव्य उक्थैः।
युधे यदिष्णान आयुधान्यृघायमाणो निरिणाति शत्रून् ॥१३॥

हे मनुष्य ! इन्द्रदेवका पुरातन कर्मको प्रशंसा गर। उनले युद्धमा शीघ्रतासाथ शस्त्र प्रहार गरेर समाजलाई हानी गर्ने शत्रुहरूको नाश गर्दछन्।

अस्येदु भिया गिरयश्च दृळ्हा द्यावा च भूमा जनुषस्तुजेते।
उपो वेनस्य जोगुवान ओणिं सद्यो भुवद्वीर्याय नोधाः ॥१४॥

इन्द्रदेवका डरले अलिया पर्वत, आकाश, पृथ्वी र सबै प्राणीहरू काँप्दछन्। इन्द्रदेवको श्रेष्ठ रक्षण सामर्थ्यको वर्णन गर्ने नोधा ऋषि उनैका अनुग्रहले बलशाली भए।

अस्मा इदु त्यदनु दाय्येषामेको यद्वव्ने भूरेरीशानः ।
प्रैतशं सूर्ये पस्पृधानं सौवश्व्ये सुष्विमावदिन्द्रः ॥१५॥

सबै धनका एक मात्र स्वामी इन्द्रदेव हुन् र उनी जे चिताउँछन् स्तोताहरूले त्यही अर्पण गर्दछन्। इन्द्रदेवले स्वश्वका पुत्र सूर्यसित साथ स्पर्धा गर्दै सोमयाग गर्ने एतश ऋषिलाई सुरक्षा प्रदान गरे।

एवा ते हारियोजना सुवृक्तीन्द्र ब्रह्माणि गोतमासो अक्रन् ।
ऐषु विश्वपेशसं धियं धाः प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥१६॥

हरिया अश्व नारिएको रथ भएका हे इन्द्रदेव ! गौतमका वंशजले तिम्रा निमित्त आकर्षक मन्त्रयुक्त स्तोत्रहरूको गान गरेका छन्। तिमी तिनलाई ध्यानपूर्वक सुन। विचारपूर्वक अपार धन वैभव प्रदान गर्ने इन्द्रदेव हामीलाई प्रातः चाँडै प्राप्त होऊन्।

[सूक्त - ६२]

ऋषि - नोधा गौतम। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

प्र मन्महे शवसानाय शूषमाङ्गूषं गिर्वणसे अङ्गिरस्वत् ।
सुवृक्तिभिः स्तुवत ऋग्मियायार्चामार्कं नरे विश्रुताय ॥१॥

इन्द्रदेवको शक्ति बढाउने स्तुति हामीलाई थाहा छ। शक्तिको आकाङ्क्षायुक्त, श्रेष्ठ वाणीले सम्पन्न, ज्ञानवान्, पराक्रमशक्तिले विख्यात इन्द्रदेवलाई अङ्गिराका जस्तै स्तुति र मन्त्रले हामी अर्चना गर्दछौं।

प्र वो महे महि नमो भरध्वमाङ्गूष्यं शवसानाय साम ।
येना नः पूर्वे पितरः पदज्ञा अर्चन्तो अङ्गिरसो गा अविन्दन् ॥२॥

हे ऋत्विक् ! तिमी महान् पराक्रमी इन्द्रदेवलाई प्रसन्न गर्नका लागि स्तुति र सामगान गर्दै उनलाई नमस्कार गर। हाम्रा पूर्वज अङ्गिरा आदि ऋषिहरूले यसै किसिमको अर्चना गरेर तेजस्विता प्राप्त गरेका थिए।

इन्द्रस्याङ्गिरसां चेष्टौ विदत्सरमा तनयाय धासिम् ।
बृहस्पतिर्भिनदद्रिं विदद्गाः समुस्रियाभिर्वावशन्त नरः ॥३॥

इन्द्रदेव र अङ्गिराहरूको इच्छाले सरमाले आफ्ना पुत्रका लागि अन्न प्राप्त गरेका थिए। देवताहरूका महान् स्वामी इन्द्रदेवले असुरहरूलाई मारेर जलधारा मुक्त गराए। प्रवाहित जल पाएपछि सबै मानिसहरू हर्षित भए।

स सुष्टुभा स स्तुभा सप्त विप्रैः स्वरेणाद्रिं स्वर्योऽनवग्वैः ।
सरण्युभिः फलिगमिन्द्र शक्र वलं रवेण दरयो दशग्वैः ॥४॥

हे शक्तिशाली इन्द्रदेव ! सप्तर्षिले उत्तम स्तोत्रले सस्वर गाएको नवीन स्तुति तीव्र उत्कण्ठाले सुनेर प्रशंसित भएपछि तिमीले बलशाली मेघ भत्कायौ। त्यसले दसै दिशामा घोर गर्जना भयो।

गृणानो अङ्गिरोभिर्दस्म वि वरुषसा सूर्येण गोभिरन्धः ।
वि भूम्या अप्रथय इन्द्र सानु दिवो रज उपरमस्तभायः ॥५॥

हे इन्द्रदेव ! अङ्गिरा आदि ऋषिहरूले तिमीलाई स्तुति गरे। तिमीले त्यो स्तुति पायौ। तिमीले दर्शनीय उषादेवी र सूर्यदेवको दीप्तिमान रश्मिका सहयोगले अन्धकार हटायौ। भूमिप्रदेशलाई विस्तृत बनायौ। द्युलोक र अन्तरिक्षलाई स्थिर गरायौ।

तदु प्रयक्षतममस्य कर्म दस्मस्य चारुतममस्ति दंसः ।
उपह्वरे यदुपरा अपिन्वन्मध्वर्णसो नद्यश्चतस्रः ॥६॥

भूमिमाथि बगेका चार वटा नदीलाई इन्द्रदेवले मधुर जलले परिपूर्ण गराए। उनका अति प्रशंसनीय, सुन्दरतम र दर्शनीय कर्महरूमा यो पनि एक हो।

द्विता वि वव्रे सनजा सनीळे अयास्यः स्तवमानेभिरर्कैः ।
भगो न मेने परमे व्योमन्नधारयद्रोदसी सुदंसाः ॥७॥

अयास्य ऋषिका प्रशंसनीय स्तोत्रले पूजित इन्द्रदेवले द्युलोकलाई एकै नासले पृथिवी र आकाश गरी दुई रूपमा विभक्त गराए। सबैतिर व्याप्त रहेका आकाशले सूर्यदेवलाई धारण गरेझैं शतकर्मा इन्द्रदेवले पृथ्वी र आकाशलाई धारण गरे।

सनाद्दिवं परि भूमा विरूपे पुनर्भुवा युवती स्वेभिरेवैः।
कृष्णेभिरक्तोषा रुशद्भिर्वपुर्भिरा चरतो अन्यान्या ॥८॥

विभिन्न रूप भएका रात्रि र उषा नामका दुई युवतीहरू आआफ्ना गतिले आकाश र भूमिका चारै दिशामा सनातन कालदेखि नै विचरण गर्दै छन्। तिनमा कालो वर्णकी रात्रि र प्रकाश भएकी उषा छुट्टाछुट्टै हिँड्छन्। यिनीहरू कहिल्यै सँगै हिँड्दैनन्।

सनेमि सख्यं स्वपस्यमानः सूनुर्दाधार शवसा सुदंसाः।
आमासु चिद्दधिषे पक्वमन्तः पयः कृष्णासु रुशद्रोहिणीषु ॥९॥

उत्तम वर्षा गर्ने, बलका पुत्र, उत्तमकर्मा, स्तोताको सधैं मित्रता प्राप्त गर्ने हे इन्द्रदेव ! तिमी कलिला गाईमा पनि पौष्टिक दुध स्थापित गर्दछौ। कालो र रातो रङ्गका गाईमा पनि सेतो रङ्गको दुध स्थापित गर्दछौ।

सनात्सनीडा अवनीरवाता व्रता रक्षन्ते अमृताः सहोभिः।
पुरू सहस्रा जनयो न पत्नीर्दुवस्यन्ति स्वसारो अह्रयाणम् ॥१०॥

सधैं सँगै रहने औँलाहरूले आआफ्ना बलमा अनेकौं स्थिर र अविनाशी काम गर्दछन्। पुरुषले पत्नीको इच्छा पूरा गरिदिएझैं औँलाहरू निर्बाध रूपमा स्वयं सञ्चालित भएर इन्द्रदेवको इच्छा पूरा गर्दछन्।

सनायुवो नमसा नव्यो अर्कैर्वसूयवो मतयो दस्म दद्रुः।
पतिं न पत्नीरुशतीरुशन्तं स्पृशन्ति त्वा शवसावन्मनीषाः ॥११॥

हे दर्शनीय इन्द्रदेव ! यज्ञ र वैभवको इच्छा गर्ने ज्ञानीहरू स्तोत्रका माध्यमबाट तिम्रो पूजाअर्चना गर्दछन्। हे बलवान् इन्द्रदेव ! पतिव्रता नारीले आफ्ना पतिलाई प्रसन्न राखेझैं उनीहरूबाट गरिएका स्तुतिले तिमीलाई प्रसन्नता प्रदान गर्दछन्।

सनादेव तव रायो गभस्तौ न क्षीयन्ते नोप दस्यन्ति दस्म।
द्युमाँ असि क्रतुमाँ इन्द्र धीरः शिक्षा शचीवस्तव नः शचीभिः ॥१२॥

हे दर्शनीय इन्द्रदेव ! तिमीले आफ्ना हातमा सनातन कालदेखि नै कहिल्यै नष्ट नहुने खालको अक्षय ऐश्वर्य धारण गरेका छौ। हे इन्द्रदेव ! तिमी दीप्तिमान्, कर्मवान्, धैर्यवान् र सामर्थ्यवान् छौ। आफ्ना सामर्थ्यले हामीलाई धन प्राप्त गर्ने प्रेरणा देऊ।

सनायते गोतम इन्द्र नव्यमतक्षद्ब्रह्म हरियोजनाय।
सुनीथाय नः शवसान नोधाः प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥१३॥

हे इन्द्रदेव ! तिमी सनातन कालदेखि नै स्थिर छौ, उत्तम मार्गमा यात्रा गर्छौ र अश्वलाई नियन्त्रण गर्दछौ। तिम्रो स्तुति गर्नका लागि गौतम ऋषिका पुत्र नोधा नामका ऋषिले नवीन स्तोत्र रचना गरे। बलवान्, धनका लागि प्रेरणा दिने हे इन्द्रदेव ! तिमी बिहान चाँडै हामीकहाँ आऊ।

## [सूक्त - ६३]

**ऋषि** - नोधा गौतम। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

त्वं महाँ इन्द्र यो ह शुष्मैर्द्यावा जज्ञानः पृथिवी अमे धाः।
यद्ध ते विश्वा गिरयश्चिदभ्वा भिया दृळ्हासः किरणा नैजन् ॥१॥

हे इन्द्रदेव ! तिमी महान् छौ। उत्पन्न हुनासाथ तिमीले द्यावापृथिवीलाई आफ्ना बलले नियन्त्रण गऱ्यौ। तिम्रा डरले सुदृढ पर्वतका समूहहरू पनि किरणझैं काँप्दछन्।

आ यद्धरी इन्द्र विव्रता वेरा ते वज्रं जरिता बाह्वोर्धात्।
येनाविहर्यतक्रतो अमित्रान्पुर इष्णासि पुरुहूत पूर्वीः ॥२॥

निष्काम भावले उत्तम कर्म गर्ने र धेरै तिरबाट प्रशंसा गरिने हे इन्द्रदेव ! तिमी विविध कर्म गर्दछौ। जब आफ्ना रथबाट अश्वद्वारा आउँछौ, त्यस बेला स्तोताहरू तिम्रा हातमा वज्र स्थापित गराउँछन्। तिमी उसै वज्रले शत्रुका असङ्ख्य सहरहरू ध्वस्त गर्दछौ।

त्वं सत्य इन्द्र धृष्णुरेतान्त्वमृभुक्षा नर्यस्त्वं षाट्।
त्वं शुष्णं वृजने पृक्ष आणौ यूने कुत्साय द्युमते सचाहन् ॥३॥

हे सत्यवान् इन्द्रदेव ! तिमी ऋभुगण र मानिसका कुशल नेता हौ। शत्रुलाई वशमा गर्ने विजेताजस्तै छौ। ठूला सङ्ग्राममा तिमी तेजस्वी, युवाजस्तै हुन्छौ। तिमीले नै कुत्सको सहायक भएर शुष्ण नामका असुरको वध गरेका थियौ।

त्वं ह त्यदिन्द्र चोदीः सखा वृत्रं यद्वज्रिन्वृषकर्मन्नुभ्नाः ।
यद्ध शूर वृषमणः पराचैर्वि दस्यूँर्योनावकृतो वृथाषाट् ॥४॥

हे इन्द्रदेव ! तिमीले कुत्सको सहायता गऱ्यौ र प्रसिद्ध विजेताजस्तो भएर धन प्राप्त गऱ्यौ। शत्रुको विनाश गर्ने, जलको वर्षा गराउने र वज्र हातमा लिने हे इन्द्रदेव ! जब तिमीले सङ्ग्राममा कुत्सका विरोधी वृत्रलाई माऱ्यौ र अरू शत्रुलाई भगायौ, त्यस वेला कुत्सलाई सम्पूर्ण यश प्राप्त भयो।

त्वं ह त्यदिन्द्रारिषाण्यन्दृळ्हस्य चिन्मर्तानामजुष्टौ ।
व्य१स्मदा काष्ठा अर्वते वर्घनेव वज्रिञ्छ्नथिह्यमित्रान् ॥५॥

हे वज्रधारी इन्द्रदेव ! अरू मानिसमाथि क्रोध गर्ने बलिया शत्रु पनि तिमीमाथि प्रहार गर्न सक्दैनन्। हे इन्द्रदेव ! घनले फलाम पिटेझैँ हाम्रा शत्रुमाथि प्रहार गरेर तिमी उनीहरूलाई मारिदेऊ। हाम्रा अश्वको मार्ग मुक्त गर र हाम्रो प्रगति निर्बाध होस्।

त्वां ह त्यदिन्द्रार्णसातौ स्वर्मीळ्हे नर आजा हवन्ते ।
तव स्वधाव इयमा समर्य ऊतिर्वाजेष्वतसाय्या भूत् ॥६॥

हे इन्द्रदेव ! धन र सुख प्राप्तिका लागि गरिने युद्धमा मानिसले सहायता प्राप्त गर्नका लागि तिमीलाई गुहार्दछन्। हे बल धारण गरेका इन्द्रदेव ! सङ्ग्राममा योद्धाहरूलाई तिमीबाट सामर्थ्य प्राप्त हुन्छ।

त्वं ह त्यदिन्द्र सप्त युध्यन्पुरो वज्रिन्पुरुकुत्साय दर्दः ।
बर्हिर्न यत्सुदासे वृथा वर्गंहो राजन्वरिवः पूरवे कः ॥७॥

हे वज्रधारी इन्द्रदेव ! तिमीले पुरुकुत्सको सहायता गर्नका लागि युद्ध गर्दा शत्रुका सात सहर भत्कायौ र सुदासको सहायताका लागि शत्रुहरूलाई कुश काटेझैँ काट्यौ। तिमीले नै पुरुका लागि धन प्रदान गऱ्यौ।

त्वं त्यां न इन्द्र देव चित्रामिषमापो न पीपयः परिज्मन् ।
यया शूर प्रत्यस्मभ्यं यंसि त्मनमूर्जं न विश्वध क्षरध्यै ॥८॥

हे महान् बलशाली इन्द्रदेव ! जल बढाएझैँ हाम्रा भूमिको चारै दिशामा अन्न बढाइदेऊ। सर्वत्र पानीका धारा बगाएझैँ हामीलाई अन्न प्रदान गर।

अकारि त इन्द्र गोतमेभिर्ब्रह्माण्योक्ता नमसा हरिभ्याम् ।
सुपेशसं वाजमा भरा नः प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥९॥

हे अश्वद्वारा सम्पन्न इन्द्रदेव ! गौतमका वंशजहरूले तिम्रा निमित्त स्तुति मन्त्रको रचना गरे। उनले श्रेष्ठ स्तोत्र गाएर तिम्रो सत्कार गरे। हे इन्द्रदेव ! हामीलाई तिमी श्रेष्ठ बल प्रदान गर र धन प्राप्त गर्ने बुद्धि देऊ। बिहान हामीलाई छिट्टै प्राप्त होऊ।

## [सूक्त – ६४]

ऋषि – नोधा गौतम। देवता – मरुद्गण। छन्द – जगती त्रिष्टुप्।

वृष्णे शर्धाय सुमखाय वेधसे नोधः सुवृक्तिं प्र भरा मरुद्भ्यः ।
अपो न धीरो मनसा सुहस्त्यो गिरः समञ्जे विदथेष्वाभुवः ॥१॥

हे नोधा ऋषि ! बल पाउनका लागि, बल वृद्धिका लागि, उत्तम यज्ञ सम्पादनका लागि र मेधा प्राप्तिका लागि मरुत्गणलाई उत्तम काव्यले स्तुति गर। यज्ञमा हामी होताहरू हात जोडेर हृदयदेखि नै उनै मरुत्हरूलाई अभ्यर्थना गर्दछौँ र जल सेचन गरेझैँ उत्तम वाणीले मन्त्र गायन गर्दछौँ।

ते जज्ञिरे दिव ऋष्वास उक्षणो रुद्रस्य मर्या असुरा अरेपसः ।
पावकासः शुचयः सूर्या इव सत्वानो न द्रप्सिनो घोरवर्पसः ॥२॥

रुद्रदेवको गण दिव्यलोकबाट प्रकट भएझैँ महान् सामर्थ्यवान्, प्राणरक्षक, पवित्रता सञ्चार गराउने, सूर्यसमान तेजस्वी, सोमपान गर्ने, विकराल शरीरधारी मरणशील मरुत्गण प्रकट भएको छ।

युवानो रुद्रा अजरा अभोग्घनो ववक्षुरध्रिगावः पर्वता इव ।
दृळ्हा चिद्विश्वा भुवनानि पार्थिवा प्र च्यावयन्ति दिव्यानि मज्मना ॥३॥

शत्रुहरूका लागि रुद्ररूप, अजर, कृपणहन्ता, अबाधगतिमा विचरण गर्ने, युवा मरुत्गण विशेष रूपले आकर्षक छ। पृथ्वी र द्युलोकका सबै प्राणीको बल यिनले विचलित गराइदिन्छन्।

चित्रैरञ्जिभिर्वपुषे व्यञ्जते वक्षः सु रुक्मां अधि येतिरे शुभे ।
अंसेष्वेषां नि मिमृक्षुर्ऋष्टयः साकं जज्ञिरे स्वधया दिवो नरः ॥४॥

शरीरको शोभा बढाउनका लागि विविध अलङ्कारले सुसज्जित मरुत्गण विशेष रूपमा आकर्षक छन्। शोभाका निमित्त यिनले वक्षमा स्वर्णाभूषण धारण गरेका छन्। यी मरुत्हरूका काँधमा राखिएका अस्त्रहरूको दीप्ति सर्वत्र प्रकाशित भएको छ। यी वीर पुरुषहरू आफ्नै बलले आकाशमा प्रकट भएका हुन्।

ईशानकृतो धुनयो रिशादसो वातान्विद्युतस्तविषीभिरक्रत ।
दुहन्त्यूधर्दिव्यानि धूतयो भूमिं पिन्वन्ति पयसा परिज्रयः ॥५॥

ऐश्वर्यदाता स्वामी, शत्रुलाई कम्पित गराउने, हिंसकहरूको नाश गर्ने मरुत्गणले आफ्नो सामर्थ्यद्वारा वायु र विद्युत्लाई उत्पन्न गर्दछन्। सर्वत्र गमन गरेर शत्रुमाथि आघात गर्ने यी वीरहरू आकाशीय मेघ दुहेर भूमिलाई वर्षाका पानीले तृप्त गराउँछन्।

पिन्वन्त्यपो मरुतः सुदानवः पयो घृतवद्विदथेष्वाभुवः ।
अत्यं न मिहे वि नयन्ति वाजिनमुत्सं दुहन्ति स्तनयन्तमक्षितम् ॥६॥

उत्तम दानी, सामर्थ्यशील मरुत्गण यज्ञलाई घिउ, दुध र जल आदि रसले सिँच्दछन्। अश्वमा घुमेझैं देखिने बलशाली मेघलाई यिनले उचित रूपमा दोहन गर्दछन्।

महिषासो मायिनश्चित्रभानवो गिरयो न स्वतवसो रघुष्यदः ।
मृगा इव हस्तिनः खादथा वना यदारुणीषु तविषीरयुग्ध्वम् ॥७॥

हे महिमामय दीप्तिसमूह प्रकट गर्ने मरुत्गण ! तिमीहरू प्रपञ्ची पर्वतजस्तै अभेद्य बलका साथ वेगवान् भएर गमन गर्दछौ। हात्ती मृग आदि तृणाहारी प्राणीलेझैं तिमीहरू वन खान्छौ। तिमीहरूले रातो रङ्गका बलिया घोडा आफ्ना रथमा जोतेका छौ।

सिंहा इव नानदति प्रचेतसः पिशाइव सुपिशो विश्ववेदसः ।
क्षपो जिन्वन्तः पृषतीभिर्ऋष्टिभिः समित्सबाधः शवसाहिमन्यवः ॥८॥

वीर मरुत्गण सिंहजस्तै गर्जनशील, प्रकृष्ट ज्ञानी, उत्तम बलवान् पुरुषजस्तै सम्पूर्ण ऐश्वर्यले सम्पन्न छन्। यी वीरहरू शत्रुलाई क्षतविक्षत पार्दै पीडित जनको रक्षा गरेर सन्तुष्टि प्रदान गर्दछन्। यिनीहरू टाटे घोडा र हतियारले सजिएर हिंडेका छन्। यिनले अक्षय बल र उग्र रूप धारण गरेका छन्।

रोदसी आ वदता गणश्रियो नृषाचः शूराः शवसाहिमन्यवः ।
आ वन्धुरेष्वमतिर्न दर्शता विद्युन्न तस्थौ मरुतो रथेषु वः ॥९॥

सबैका रक्षक, वीर, पराक्रमी, उत्साहसम्पन्न र शोभायमान हे मरुत्हरू हो ! आफ्ना गर्जनको गुञ्जनले आकाश र पृथ्वी व्याप्त गर। रथमा विराजमान हुनाले तिमीहरूको तेजस्वी प्रकाश विद्युत्सरि सर्वत्र फैलिएको छ।

विश्ववेदसो रयिभिः समोकसः संमिश्लासस्तविषीभिर्विरप्शिनः ।
अस्तार इषुं दधिरे गभस्त्योरनन्तशुष्मा वृषखादयो नरः ॥१०॥

अनेक धनले युक्त, सम्पूर्ण धनका स्वामी, उस्तै स्थानबाट उत्पन्न, विभिन्न बलले युक्त, विशिष्ट सामर्थ्य भएका, अस्त्रप्रहारक, अनन्त सामर्थ्यवान् र पुष्ट अन्नका भक्षक वीर मरुत्गणले आफ्ना बाहुमा विशिष्ट बल धारण गरेका छन्।

हिरण्ययेभिः पविभिः पयोवृध उज्जिघ्नन्त आपथ्यो३ न पर्वतान् ।
मखा अयासः स्वसृतो ध्रुवच्युतो दुध्रकृतो मरुतो भ्राजदृष्टयः ॥११॥

जल वृद्धि गराउने, पूजनीय, द्रुतगतिका, स्पन्दनयुक्त, अडिग पदार्थलाई पनि हल्लाउन सक्ने, निर्बाध गति भएका, धारिला हतियार धारण गर्ने मरुत्गण सुनौला रथका घुमाउरा मार्गमा आएउने मेघलाई उडाइदिन्छन्।

घृषुं पावकं वनिनं विचर्षणिं रुद्रस्य सूनुं हवसा गृणीमसि ।
रजस्तुरं तवसं मारुतं गणमृजीषिणं वृषणं सश्चत श्रिये ॥१२॥

सङ्घर्षशक्तियुक्त, पवित्रकर्ता, वनमा सञ्चरण गर्ने, विशेष चक्षुसम्पन्न, रुद्रका पुत्ररूपी मरुत्गणलाई हामी स्तुति गर्दछौं। अति वेगवान् धुलो उडाउने बलशाली, वीर्यवान् र तीक्ष्ण बुद्धिमान् मरुत्गणको आश्रय हामी सबैले प्राप्त गरौं।

प्र नू स मर्तः शवसा जनाँ अति तस्थौ व ऊती मरुतो यमावत।
अर्वद्भिर्वाजं भरते धना नृभिराप्रच्छ्यं क्रतुमा क्षेति पुष्यति ॥१३॥

हे मरुत्गण ! तिमीहरूको रक्षणसामर्थ्यद्वारा रक्षित मानिस संसारमा सबैभन्दा बढी बलशाली भएर स्थिर हुन्छ। अश्वद्वारा अन्न र मानिसहरूद्वारा धन प्राप्त गरेपछि उत्तम यज्ञ गरेर ऊ प्रशंसित हुन्छ।

चर्कृत्यं मरुतः पृत्सु दुष्टरं द्युमन्तं शुष्मं मघवत्सु धत्तन।
धनस्पृतमुक्थ्यं विश्वचर्षणिं तोकं पुष्येम तनयं शतं हिमाः ॥१४॥

हे मरुत्गण ! हामी कार्यमा समर्थ, युद्धमा अजेय, दीप्तिमान्, बलले युक्त र वैभवले सम्पन्न होऔं। हामी श्रेष्ठ धनवैभवले सम्पन्न सर्वहितकारी भएर सय वर्षसम्म जीवित रहौं र छोरानातिहरूबाट पनि सुख प्राप्त गरौं।

नू ष्ठिरं मरुतो वीरवन्तमृतीषाहं रयिमस्मासु धत्त।
सहस्रिणं शतिनं शूशुवांसं प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥१५॥

हे मरुत्गणहरू हो ! तिमीहरू हामीलाई शत्रु जित्न चाहिने वीरोचित स्थायी सामर्थ्य प्रदान गर। हामीभित्र असङ्ख्य धन स्थापित गर। हाम्रा प्रातःकालीन यज्ञमा तिमीहरू तुरुन्त उपस्थित होओ।

## [सूक्त - ६५]

ऋषि – पराशर शाक्त्य। देवता – अग्नि। छन्द – द्विपदा विराट्।

पश्वा न तायुं गुहा चतन्तं नमो युजानं नमो वहन्तम्।
सजोषा धीराः पदैरनु ग्मन्नुप त्वा सीदन्विश्वे यजत्राः ॥१–२॥

हे अग्निदेव ! पशु चोरलाई मानिसहरूले पहिल्याउँदै हिंडेझैं बुद्धिमान् देवगणले तिमीलाई पछ्याउँछ। सबै याजकहरू तिम्रो वरिपरि बसेर यज्ञकुण्डरूप गुफामा स्तुति गर्दा तिमी प्रकट हुन्छौ। यजमानको हवि देवतासम्म पुऱ्याउने र देवतालाई याजयसित आवद्ध गराउनेका रूपमा सम्मानित छौ।

ऋतस्य देवा व्रता गुर्भुवत्परिष्टिर्द्यौर्न भूम।
वर्धन्तीमापः पन्वा सुशिश्विमृतस्य योना गर्भे सुजातम् ॥३–४॥

देवगणले अग्निदेवलाई जताततै भूमिमा देखे। जलप्रवाहका गर्भबाट अग्निदेव उत्पन्न भए। उत्तम स्तोत्रले उनको उचित प्रकारले उन्नति गराए। देवताहरूले अग्निदेवका कर्मको अनुगमन गरे र उनकै प्रेरणाले भूमिलाई स्वर्गजस्तै सुखसम्पन्न बनाए।

पुष्टिर्न रण्वा क्षितिर्न पृथ्वी गिरिर्न भुज्म क्षोदो न शंभु।
अत्यो नाज्मन्त्सर्गप्रतक्तः सिन्धुर्न क्षोदः क ईं वराते ॥५–६॥

खोजेकै जस्तो आनन्द यी अग्निदेवले प्रदान गर्दछन्। भूमिजस्तै विस्तृत, पर्वतजस्तै पोषक तत्त्व प्रदान गर्ने, जलजस्तै कल्याणकारी, अश्वजस्तै अग्रणी वाहक र समुद्रजस्तै विशाल यी अग्निदेवलाई कसले पो रोक्न सक्ला र ?

जामिः सिन्धूनां भ्रातेव स्वस्रामिभ्यान्न राजा वनान्यत्ति।
यद्वातजूतो वना व्यस्थादग्निर्ह दाति रोमा पृथिव्याः ॥७–८॥

जल र जलाशय दिदीबहिनी हुन् भने अग्निदेव तिनका दाजुभाइ हुन्। शत्रुलाई सखाप पार्ने राजाजस्तै भएर यिनले वन नष्ट गर्दछन्। जब यी वायुबाट प्रेरित भएर वनतिर लाग्दछन् त्यस बेला भूमिका रौंका रूपमा रहेका बोटबिरुवा र वनस्पति नाश हुन्छन्।

श्वसित्यप्सु हंसो न सीदन् क्रत्वा चेतिष्ठो विशामुषर्भुत्।
सोमो न वेधा ऋतप्रजातः पशुर्न शिश्वा विभुर्दूरेभाः ॥९–१०॥

अग्निदेव जलमा बसे पनि पानीबाट प्रभावित नहुने हाँसको जस्तै जीवन निर्वाह गर्छन्। यिनी उषाकालमा उठ्छन् र आफ्ना कर्मले प्रजा जगाउँछन्। सोमजस्तै उन्नति गराउने, शिशुजस्तै चञ्चल र यज्ञबाट उत्पन्न अग्निले निकै टाढासम्म प्रकाश फैलाउँछन्।

[सूक्त - ६६]

ऋषि - पराशर शाक्त्य। देवता - अग्नि। छन्द - द्विपदा विराट्।

**रयिर्न चित्रा सूरो न संदृगायुर्न प्राणो नित्यो न सूनुः।**
**तक्वा न भूर्णिर्वना सिषक्ति पयो न धेनुः शुचिर्विभावा ॥१-२॥**

विलक्षण धनजस्तै स्मरणीय, सम्यक् द्रष्टा ज्ञानीजस्तै, प्राण प्रदाता जीवनजस्तै, हितकारी पुत्रजस्तै, द्रुतगामी अश्वजस्तै यी अग्निदेव गाईजस्तै उपकारी छन्। काठरूपी जीवन जलाएर यिनी विशेष प्रकाशयुक्त हुन्छन्।

**दाधार क्षेममोको न रण्वो यवो न पक्वो जेता जनानाम्।**
**ऋषिर्न स्तुभ्वा विक्षु प्रशस्तो वाजी न प्रीतो वयो दधाति ॥३-४॥**

रमणीय गृहजस्तै र परिपक्व अन्नजस्तै भएर प्रजामाथि प्रभुत्व स्थापित गर्ने अग्निदेव ऋषिजस्तै स्तुत्य छन्। प्रजाहरूद्वारा प्रशंसित यी अग्निदेव दुनियाँको कल्याणका लागि जीवन धारण गर्दछन्। उत्साहित होताजस्तै भएर यिनी प्रजाको हितमा समर्पित छन्।

**दुरोकशोचिः क्रतुर्न नित्यो जायेव योनावरं विश्वस्मै।**
**चित्रो यदभ्राट्छ्वेतो न विक्षु रथो न रुक्मी त्वेषः समत्सु ॥५-६॥**

अग्निदेव अचम्मको पराक्रमले युक्त परिश्रमीजस्तै भएर सधैं असल काममा लाग्छन्। यिनी अद्भुत दीप्तिले युक्त, शुभ्र प्रकाशले प्रकाशमान, प्रजाहरूका बीचमा रथजस्तै शोभायमान देखिन्छन्। स्त्रीले घरमा दिएझैं सुख यिनले सबैलाई दिन्छन्। यज्ञमा यिनी सुनौला तेजले सम्पन्न देखिन्छन्।

**सेनेव सृष्टामं दधात्यस्तुर्न दिद्युत्त्वेषप्रतीका।**
**यमो ह जातो यमो जनित्वं जारः कनीनां पतिर्जनीनाम् ॥७-८॥**

अग्निदेव आक्रामक सेनाजस्तै बल भएका छन्। उनी प्रचण्ड वेग र तेजले विद्युत्रूपी अस्त्र प्रहार गर्दछन्। उत्पन्न भइसकेका वा उत्पन्न हुनुपर्नेहरूका नियन्ता पनि अग्निदेव नै हुन्। अग्निदेव कन्याहरूको कौमार्य समाप्त गर्ने र विवाहिताका पति हुन्।

**तं वश्चराथा वयं वसत्यास्तं न गावो नक्षन्त इद्धम्।**
**सिन्धुर्न क्षोदः प्र नीचीरैनोन्नवन्त गावः स्वर्दृशीके ॥९-१०॥**

सूर्यास्त हुँदा गाई घर फर्किएर आएझैं सन्तान र पशुहरूले युक्त भएका घरमा अग्निदेव प्राप्त हुन्छन्। जलको प्रवाह जस्तै अग्निका ज्वाला प्रवाहित हुन्छन्। उनको सुन्दर किरण आकाशतर्फ उचालिन्छ।

[सूक्त - ६७]

ऋषि - पराशर शाक्त्य। देवता - अग्नि। छन्द - द्विपदा विराट्।

**वनेषु जायुर्मर्तेषु मित्रो वृणीते श्रुष्टिं राजेवाजुर्यम्।**
**क्षेमो न साधुः क्रतुर्न भद्रो भुवत्स्वाधीर्होता हव्यवाट् ॥१-२॥**

राजाले सर्वगुणसम्पन्न वीर पुरुषलाई रोजेझैं अग्निदेवले यजमानलाई वरण गर्दछन्। जङ्गलमा उत्पन्न अग्निदेव मानिसका लागि मित्र, रक्षक र कल्याणकारी हुन्। होता र हविवाहकका रूपमा चिनिएका यी अग्निदेव सम्यक् रूपमा हितकारी छन्।

**हस्ते दधानो नृम्णा विश्वान्यमे देवान्धाद्गुहा निषीदन्।**
**विदन्तीमत्र नरो धियन्धा हृदा यत्तष्टान्मन्त्राँ अशंसन् ॥३-४॥**

यी अग्निदेवले सबै खालका धन हातमा लिएका छन्। गुफाजस्ता गोप्य ठाउँमा रहँदा पनि यिनले देवताहरूलाई शक्तिसम्पन्न बनाए। मेधावी पुरुषहरू हृदयमा उत्पन्न मन्त्र र स्तुतिले अग्निदेवलाई प्रकट गराउँछन्।

**अजो न क्षां दाधार पृथिवीं तस्तम्भ द्यां मन्त्रेभिः सत्यैः।**
**प्रिया पदानि पश्वो नि पाहि विश्वायुरग्ने गुहा गुहं गाः ॥५-६॥**

अग्निदेव अजन्मा हुन् र यिनले पृथ्वीलाई धारण गरेका छन्। यिनले अन्तरिक्षलाई धारण गरेका छन्। आफ्ना सत्सङ्कल्पले द्युलोकलाई पनि स्तम्भजस्तै स्थिर गराएका छन्। हे अग्निदेव ! पशुका प्रिय स्थानहरूलाई संरक्षित गर। तिमी सम्पूर्ण प्राणीका लागि जीवनको आधार भएर अव्यक्त ठाउँमा रहेका छौ।

य ईं चिकेत गुहा भवन्तमा यः ससाद धारामृतस्य।
वि ये चृतन्त्यृता सपन्त आदिद्वसूनि प्र ववाचास्मै ॥७-८॥

अग्निदेवको गोप्यता जानेर यज्ञमा प्रज्वलित गर्दै स्तोताहरू उनलाई स्तुति गर्दछन्। ती स्तोताहरूलाई अग्निदेव धन प्राप्त गर्ने प्रेरणा दिन्छन्।

वि यो वीरुत्सु रोधन्महित्वोत प्रजा उत प्रसूष्वन्तः।
चित्तिरपां दमे विश्वायुः सद्मेव धीराः संमाय चक्रुः ॥९-१०॥

अग्निदेवले औषधीमा आफ्नो महत्ता स्थापित गरेका छन्। उनी बोटबिरुवा र फलफूल उत्पन्न गर्दछन्। ज्ञानी पुरुष जलभित्र रहेका अग्निदेवलाई पूजा गर्दछन् र घरबाट पाएजस्तै आश्रय उनीबाट पाउँछन्।

[सूक्त - ६८]

ऋषि - पराशर। देवता - अग्नि। छन्द - द्विपदा विराट्।

श्रीणन्नुप स्थाद्दिवं भुरण्युः स्थातुश्चरथमक्तून्व्यूर्णोत्।
परि यदेषामेको विश्वेषां भुवद्देवो देवानां महित्वा ॥१-२॥

सर्वपालक अग्निदेव स्थावर र जङ्गमलाई परिपक्व पार्नका लागि आकाशमा पुग्छन्। रात्रिलाई आफ्ना रश्मिले प्रकाशित तिनैले गराए। देवताको सम्पूर्ण गुण प्राप्त गर्नमा तिनी प्रमुख भएका छन्।

आदित्ते विश्वे क्रतुं जुषन्त शुष्काद्यद्देव जीवो जनिष्ठाः।
भजन्त विश्वे देवत्वं नाम ऋतं सपन्तो अमृतमेवैः ॥३-४॥

हे अविनाशी अग्निदेव ! सुखा काठ घोटिएर तिमी उत्पन्न भयौ। त्यसपछि मात्रै देवताले यज्ञकार्य सम्पन्न गरे। त्यसैको अनुसरण गरेर देवगणले देवत्व प्राप्त गरे।

ऋतस्य प्रेषा ऋतस्य धीतिर्विश्वायुर्विश्वे अपांसि चक्रुः।
यस्तुभ्यं दाशाद्यो वा ते शिक्षात्तस्मै चिकित्वान्रयिं दयस्व ॥५-६॥

अग्निदेव यज्ञका निम्ति प्रेरणा प्रदान गर्ने र यज्ञका रक्षक हुन्। अग्निदेव नै आयु हुन्, त्यसैले सबैले यज्ञकर्म गर्दछन्। हे अग्निदेव ! जसले तिमीलाई चिनेर तिम्रा लागि हवि दिन्छ, उसलाई तिमी चिन र हवि प्रदान गर।

होता निषत्तो मनोरपत्ये स चिन्वासां पती रयीणाम्।
इच्छन्त रेतो मिथस्तनूषु सं जानत स्वैर्दक्षैरमूराः ॥७-८॥

मानिसका माझमा होताका रूपमा रहने यी अग्निदेव नै प्रजाको धनका स्वामी हुन्। शरीरभित्र रहेका अग्निको सम्बन्ध वीर्यसित छ भन्ने जानेर मानिसले सन्तान उत्पत्ति गर्ने इच्छा गरे र तिनै अग्निदेवको सामर्थ्यबाट सन्तान प्राप्त गरे।

पितुर्न पुत्राः क्रतुं जुषन्त श्रोषन्ये अस्य शासं तुरासः।
वि राय और्णोद्दुरः पुरुक्षुः पिपेश नाकं स्तृभिर्दमूनाः ॥९-१०॥

पुत्रले पिताको आदेश मानेझैं जुन मानिसले अग्निदेवको आज्ञा सुनेर तुरुन्तै पालन गर्दै कार्य सम्पन्न गरे, तिनीहरूका लागि अग्निदेवले अन्न र धनको विपुल भण्डार खुला गरिदिए। यज्ञकर्ममा मर्यादित अग्निदेवले नक्षत्रद्वारा आकाश सजाए।

[सूक्त - ६९]

ऋषि - पराशर शाक्त्य। देवता - अग्नि। छन्द - द्विपदा विराट्।

शुक्रः शुशुक्वाँ उषो न जारः पप्रा समीची दिवो न ज्योतिः।
परि प्रजातः क्रत्वा बभूथ भुवो देवानां पिता पुत्रः सन् ॥१-२॥

हे अग्निदेव ! तिमी उषाका प्रेमी सूर्यदेवजत्तिकै दीप्तिमान् छौ। प्रकाशमान सूर्यदेवको ज्योतिझैं तेजस्वी भएर तिमी आफ्ना तेजले आकाश र पृथ्वीलाई पूर्ण गर्दछौ। हे अग्निदेव ! उत्पन्न भएपछि तिमीले आफ्ना कर्मद्वारा सारा विश्वलाई व्याप्त गरायौ। तिमी देवताद्वारा उत्पन्न हुनाले उनीहरूका पुत्रजस्तै हौ। देवताहरूलाई हवि आदि दिनाले तिमी उनीहरूका लागि पिताजस्तै भएका छौ।

वेधा अदृप्तो अग्निर्विजानन्नूधर्न गोनां स्वाद्मा पितूनाम्।
जने न शेव आहूर्यः सन्मध्ये निषत्तो रण्वो दुरोणे ॥३-४॥

अहङ्काररहित बुद्धि भएका, कर्तव्यको जानकारी भएका र गाईको दुधजस्तै स्वादिष्ट अन्न प्रदान गर्ने अग्निदेव यजमानले बोलाउने बित्तिकै आएर शोभायमान रूपमा यज्ञमा प्रतिष्ठित हुन्छन्। अग्निदेवले याजकहरूलाई सुख प्रदान गर्दछन्।

पुत्रो न जातो रण्वो दुरोणे वाजी न प्रीतो विशो वि तारीत्।
विशो यदह्वे नृभिः सनीळा अग्निर्देवत्वा विश्वान्यश्याः ॥५-६॥

पुत्र जन्मिएजस्तै आनन्द दिने अग्निदेव अश्वले अप्ठ्यारो ठाउँ पार लगाइदिएझैं गरी मनुष्यलाई दुःखबाट पार लगाउँछन्। मानिसहरूले एकजुट भएर देवताको आह्वान गर्दा अग्निदेव दिव्य प्रेरणाले युक्त भएको दिव्य रूप धारण गर्दछन्।

नकिष्ट एता व्रता मिनन्ति नृभ्यो यदेभ्यः श्रुष्टिं चकर्थ।
तत्तु ते दंसो यदहन्त्समानैर्नृभिर्यद्युक्तो विवे रपांसि ॥७-८॥

हे अग्निदेव ! तिमी जुन मानिसलाई सहायता गर्छौ, उनले तिम्रो नियम उल्लङ्घन गर्न सक्दैनन्। मानिसहरूका साथमा रहेर तिमीले नै पापरूपी राक्षस मारिदियौ। यो तिम्रो श्रेष्ठ र प्रशंसनीय कार्य हो।

उषो न जारो विभावोस्रः संज्ञातरूपश्चिकेतदस्मै।
त्मना वहन्तो दुरो व्यृण्वन्नवन्त विश्वे स्व१र्दृशीके ॥९-१०॥

उषाप्रेमी सूर्यजस्तै देदीप्यमान, प्रकाशित र प्रख्यात अग्निदेवले हविदातालाई चिनून्। हवियुक्त भएपछि यज्ञको द्वार खोल्ने अग्निदेव सम्पूर्ण आकाश र दसै दिशामा व्याप्त हुँदै ऊर्ध्वगति प्राप्त गर्दछन्।

[सूक्त – ७०]

ऋषि – पराशर शाक्त्य। देवता – अग्नि। छन्द – द्विपदा विराट्।

वनेम पूर्वीरर्यो मनीषा अग्निः सुशोको विश्वान्यश्याः।
आ दैव्यानि व्रता चिकित्वाना मानुषस्य जनस्य जन्म ॥१-२॥

अग्निदेवबाट हामी अपार धनवैभव कामना गर्दछौं। उत्तम रूपमा प्रकाशित अग्निदेव देवता र मनुष्यको कर्म तथा मनुष्यका जन्मको रहस्य जानेर सर्वमा व्याप्त छन्।

गर्भो यो अपां वनानां गर्भश्च स्थातां गर्भश्चरथाम्।
अद्रौ चिदस्मा अन्तर्दुरोणे विशां न विश्वो अमृतः स्वाधीः ॥३-४॥

अग्निदेव जल, वन, जङ्गम र स्थावरका गर्भमा विद्यमान छन्। उत्तमकर्मा र अविनाशी अग्निदेव सबै प्रजाहरूलाई, राजाले जत्तिकै आश्रय दिन्छन्। त्यसैले मानिसहरूले घरमा र पर्वतमा अग्निदेवलाई हवि प्रदान गर्दछन्।

स हि क्षपावाँ अग्नी रयीणां दाशद्यो अस्मा अरं सूक्तैः।
एता चिकित्वो भूमा नि पाहि देवानां जन्म मर्तांश्च विद्वान् ॥५-६॥

उत्तम मन्त्रद्वारा जुन याजकले अग्निदेवलाई स्तुति गर्दछन्, उनलाई निश्चय नै अग्निले वैभव प्रदान गर्दछन्। हे सर्वज्ञ अग्निदेव ! तिमी देवता र मनुष्यका जीवनको रहस्य जान्दछौ। तिमी समस्त प्राणीको रक्षा गर।

वर्धान्यं पूर्वीः क्षपो विरूपाः स्थातुश्च रथमृतप्रवीतम्।
अराधि होता स्व१र्निषत्तः कृण्वन्विश्वान्यपांसि सत्या ॥७-८॥

विविध रूपमा देखिने उषा र रात्रिले जगाउने यज्ञरूपी अग्निदेवलाई स्थावर वृक्ष आदि र जङ्गम मनुष्य आदिले जगाउँछन्। होताका रूपमा प्रतिष्ठित अग्निदेवलाई यज्ञको अनुष्ठानद्वारा हवि समर्पित गर्दै मानिसहरू पूजा गर्दछन्।

गोषु प्रशस्तिं वनेषु धिषे भरन्त विश्वे बलिं स्वर्णः।
वि त्वा नरः पुरुत्रा सपर्यन्पितुर्न जिव्रेर्वि वेदो भरन्त ॥९-१०॥

हे अग्निदेव ! वन र गाईहरूमा पुष्टिकारक पदार्थहरू स्थापित गर। सबै मानिसलाई ग्रहण गर्न योग्य श्रेष्ठ अन्न र धनले पूर्ण गराऊ। हामी विविध प्रकारले तिमीलाई पुज्दछौं। पिताले पुत्रलाई धनसम्पन्न गराएझैं हामीलाई तिमी धनी बनाऊ।

साधुर्न गृध्नुरस्तेव शूरो यातेव भीमस्त्वेषः समत्सु ॥११॥
यी देवपुरुष, पूज्य र उत्तम अग्निदेव वीरझैं अस्त्र प्रहार गर्दछन्। विकराल आक्रान्ता अग्निदेव सङ्ग्राम कालमा तेजस्विताका प्रतिमूर्ति हुने गर्दछन्।

[सूक्त - ७१]

ऋषि - पराशर शाक्त्य। देवता - अग्नि। छन्द - त्रिष्टुप।

उप प्र जिन्वन्नुशतीरुशन्तं पतिं न नित्यं जनयः सनीडाः।
स्वसारः श्यावीमरुषीमजुष्रञ्चित्रमुच्छन्तीमुषसं न गावः ॥१॥

पतिव्रता स्त्रीहरूले आफ्ना प्रयासले प्राप्त गरेका पतिलाई प्रसन्न गरेझैं हाम्रा औंलाहरू अग्निदेवलाई उचित रूपमा प्रसन्न गर्दछन्। श्याम, पीत र पुनः अरुण वर्णमा फेरिने विलक्षण उषाका किरणले सेवा जसरी अग्निको सेवा गर्दछन् हाम्रा औंलाले पनि उसरी नै अग्निदेवको सेवा गर्दछन्।

वीळु चिद्दृह्ळा पितरो न उक्थैरद्रिं रुजन्नङ्गिरसो रवेण।
चक्रुर्दिवो बृहतो गातुमस्मे अहः स्वर्विविदुः केतुमुस्राः ॥२॥

अत्यन्त विकराल र पर्वतजस्तो बलियो अज्ञानरूपी अन्धकार नामका असुरलाई हाम्रा पुर्खा अङ्गिराले मन्त्रका शब्दले नै नष्ट गरे। त्यस बेला आकाशमार्गबाट ज्योतिका रूपमा सूर्यले र ध्वजाका रूपमा किरणले सम्पन्न दिवस हामीले पायौं।

दधन्नृतं धनयन्नस्य धीतिमादिदर्यो दिधिष्वोऽ विभृत्राः।
अतृष्यन्तीरपसो यन्त्यच्छा देवाञ्जन्म प्रयसा वर्धयन्तीः ॥३॥

शाश्वत सत्यरूप यज्ञ धारण गर्ने अङ्गिराले यज्ञका तेजस्वितालाई धनझैं धारण गरे। त्यसपछि धन, तेज र पुष्टि प्राप्त गर्न इच्छुक प्रजाहरूले हविद्वारा देवताहरूलाई पुष्टि गर्दै अग्निदेवलाई प्राप्त गरे।

मथीद्यदीं विभृतो मातरिश्वा गृहेगृहे श्येतो जेन्यो भूत्।
आदीं राज्ञे न सहीयसे सचा सन्ना दूत्यं भृगवाणो विवाय ॥४॥

वायुका संयोगले उत्पन्न हुने अग्निदेव शुभ्र ज्योतिका रूपमा प्रत्येक गृह वा शरीरमा प्रतिष्ठित भए। त्यसपछि एउटा राजाले अर्का मित्र राजाकहाँ दूतद्वारा सम्पर्क गरेझैं भृगुवंशीय ऋषिले देवतासम्म हवि पुऱ्याउने दूतका रूपमा अग्निलाई स्वीकार गरे।

महे यत्पित्र ईं रसं दिवे करव त्सरत्पृशन्यश्चिकित्वान्।
सृजदस्ता धृषता दिद्युमस्मै स्वायां देवो दुहितरि त्विषिं धात् ॥५॥

महान् पोषण प्रदाता देवताहरूका निमित्त कुन ज्ञानी सज्जन हव्यरूपी सोमरस अग्निमा दिन चाहन्न र ? हतियार चलाउन कुशल अग्निदेव आफ्ना धनुपले बाण प्रहार गर्दछन् र आफूलाई सूर्यका रूपमा प्रस्तुत गर्दै पुत्री उषालाई तेज धारण गराउँछन्।

स्व आ यस्तुभ्यं दम आ विभाति नमो वा दाशादुशतो अनु द्यून्।
वर्धो अग्ने वयो अस्य द्विबर्हा यासद्राया सरथं यं जुनासि ॥६ ॥

हे अग्निदेव ! जुन याजकले तिमीलाई घरमा प्रदीप्त गराउँछ र प्रतिदिन तिम्रो कामना गर्दै स्तुतियुक्त हवि प्रदान गर्दछ, त्यसलाई तिमी दुई गुणा बल र आयु बढाइदेऊ। जो रथसहित युद्धमा तिम्रो प्रेरणाले जान्छ, ऊ धनले युक्त हुन्छ।

अग्निं विश्वा अभि पृक्षः सचन्ते समुद्रं न स्रवतः सप्त यह्वीः।
न जामिभिर्वि चिकिते वयो नो विदा देवेषु प्रमतिं चिकित्वान् ॥७॥

सात वटा महानदीहरू समुद्रमा पुगेझैं हाम्रो सम्पूर्ण हविष्यान्न अग्निदेवकहाँ पुग्छ। अन्य विशिष्ट देवताहरूलाई यो हविष्यान्न पर्याप्त छ कि छैन भन्ने हामी जान्दैनौं। त्यसैले हामीलाई तिमी अन्न आदि वैभव प्रदान गर।

आ यदिषे नृपतिं तेज आनट् छुचि रेतो निषिक्तं द्यौरभीके।
अग्निः शर्धमनवद्यं युवानं स्वाध्यं जनयत्सूदयच्च ॥८॥

शुद्ध र प्रदीप्त तेज अन्न आदिका लागि यजमानमा व्याप्त तेजले युक्त रेतसलाई उत्पत्तिस्थलमा स्थापित गरेर अग्निदेव अभीष्ट पोषणरूप सन्तान जन्माऊन् र बलवान् अनिन्द्य तरुण शुभकर्मा सन्तानलाई उनैले यज्ञ आदि शुभ कर्ममा प्रेरित गरुन्।

मनो न योऽध्वनः सद्य एत्येकः सत्रा सूरो वस्व ईशे।
राजाना मित्रावरुणा सुपाणी गोषु प्रियममृतं रक्षमाणा ॥९॥

मनजस्तै गतिशील, सूर्यरूपी मेधावी अग्निदेव एउटै सुनिश्चित मार्गमा गति गर्दछन् र विविध खालका धनमाथि आधिपत्य स्थापित गर्दछन्। सुन्दर भुजा भएका मित्रावरुण गाईहरूमा भएको उत्तम र अमृततुल्य दुधको रक्षा गर्दछन्।

मा नो अग्ने सख्या पित्र्याणि प्र मर्षिष्ठा अभि विदुष्कविः सन्।
नभो न रूपं जरिमा मिनाति पुरा तस्या अभिशस्तेरधीहि ॥१०॥

हे अग्निदेव ! तिमी मेधावी र सर्वज्ञ छौ। पुर्खाका पालादेखि चलिआएको हाम्रो मित्रता नबिर्स। सूर्यका रश्मिले अन्तरिक्ष ओगटेझैं बुढ्यौलीले हामीलाई नाश गर्न खोज्छ। त्यसैले हे अग्निदेव ! हाम्रो विनाश गर्नुभन्दा पहिल्यै त्यो बुढ्यौली नै समाप्त होस।

[सूक्त - ७२]

ऋषि - पराशर शाक्त्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

नि काव्या विधेसः शश्वतस्कर्हस्ते दधानो नर्या पुरूणि।
अग्निर्भुवद्रयिपती रयीणां सत्रा चक्राणो अमृतानि विश्वा ॥१॥

मनुष्यका हितैषि यी अग्निदेवले मनग्गे धन हातमा लिइरहेका छन्। यिनले सधैं काव्यरूपी स्तोत्र प्राप्त गर्दछन्। सबैभन्दा श्रेष्ठ धनका स्वामी अग्निदेवले स्तोताहरूका लागि सुखदायक वैभव सम्पूर्ण प्रदान गर्दछन्।

अस्मे वत्सं परि षन्तं न विन्दन्निच्छन्तो विश्वे अमृता अमूराः।
श्रमयुवः पदव्यो धियंधास्तस्थुः पदे परमे चार्वग्नेः ॥२॥

मेधावी र अमर देवताका सबै गणले इच्छा गर्दा पनि व्यापक अग्निलाई भेट्न सकेनन्। अन्त्यमा गोडा थाकेपछि मात्र बुद्धिमान् देवगण अग्निदेवका सुन्दरतम स्थानमा पुगे।

तिस्रो यदग्ने शरदस्त्वामिच्छुचिं घृतेन शुचयः सपर्यान्।
नामानि चिद्दधिरे यज्ञियान्यसूदयन्त तन्वः सुजाताः ॥३॥

हे पवित्र अग्निदेव ! तेजस्वी मनुष्यले तीन वर्षदेखि घिउले तिम्रो पूजन गरे। त्यसपछि उनीहरूले यज्ञ भन्ने उपयुक्त नाम पाए। आफ्नो शरीर शोधन गरेर उनीहरू देवता भए।

आ रोदसी बृहती वेविदानाः प्र रुद्रिया जभ्रिरे यज्ञियासः।
विदन्मर्तो नेमधिता चिकित्वानग्निं पदे परमे तस्थिवांसम् ॥४॥

याजकहरूले विशाल पृथ्वी र आकाशका विषयमा ज्ञान प्राप्त गरे। त्यसपछि उनीहरूले अग्निदेवका लागि उत्तम स्तोत्र पाठ गरे। अरू मानिसले पनि ती सर्वोत्तम स्थान र त्यहाँ रहने अग्निदेवलाई चिने, त्यसपछि तिनका विषयमा ज्ञान प्राप्त गरे।

संजानाना उप सीदन्नभिज्ञु पत्नीवन्तो नमस्यं नमस्यन्।
रिरिक्वांसस्तन्वः कृण्वत स्वाः सखा सख्युर्निमिषि रक्षमाणाः ॥५॥

देवता र मानिसले अग्निदेवलाई राम्ररी चिने। आफ्ना पत्नीसहित तिनीहरूले घुँडा टेकेर अग्निदेवको पूजा र अभिवादन गरे। उनीहरूले आफ्नो शरीर सुरक्षित र पवित्र गरे अनि सखाका रूपमा मित्रभावले रहने अग्निदेवको तत्क्षण दर्शन गर्न पाए।

त्रिः सप्त यद्गुह्यानि त्वे इत्पदाविदन्निहिता यज्ञियासः।
तेभी रक्षन्ते अमृतं सजोषाः पशूञ्च स्थातॄञ्चरथं च पाहि ॥६॥

हे अग्निदेव ! याजकहरूले तिम्रा एक्काईस प्रकारका रहस्य र यज्ञका विधिहरू जानेर तिनको प्रयोग गरे। यज्ञबाट आफ्नो जीवनशक्तिको रक्षा गरे। तिमी प्राणीहरूप्रति स्नेहयुक्त भएर सबैको रक्षा गर।

विद्वाँ अग्ने वयुनानि क्षितीनां व्यानुषक्छुरुधो जीवसे धाः।
अन्तर्विद्वाँ अध्वनो देवयानानतन्द्रो दूतो अभवो हविर्वाट् ॥७॥

हे अग्निदेव ! तिमी मनुष्यको व्यवहार जान्ने विद्वान् हौ। जीवन धारणका लागि पोषक अन्नको व्यवस्था गर। देवगण जुन मार्गबाट यात्रा गर्दछन्, त्यो मार्ग चिन र आलस्यहीन दूतका रूपमा हविष्यान्न ग्रहण गर।

स्वाध्यो दिव आ सप्त यह्वी रायो दुरो व्यृतज्ञा अजानन्।
विदद्गव्यं सरमा दृढहमूर्वं येना नु कं मानुषी भोजते विट्॥८॥

हे अग्निदेव ! ऋषिहरूले ध्यानद्वारा सृष्टिको रहस्य बुझे। उनले आकाशबाट बग्ने सात नदीबाट ऐश्वर्यका ढोकाहरू खोल्ने विधि पनि जाने। तिम्रै प्रेरणाले सरमाले गाई खोजेर निकालिन् र त्यसो भएपछि सबै मानवसन्तानहरू सुखपूर्वक पालिएका छन्।

या ये विश्वा स्वपत्यानि तस्थुः कृण्वानासो अमृतत्वाय गातुम्।
महा महद्भिः पृथिवी वि तस्थे माता पुत्रैरदितिर्धायसे वेः॥९॥

सम्पूर्ण श्रेष्ठ कर्महरू सम्पादन गरेर अमरत्व प्राप्त गर्ने मार्ग देवताले बनाउँछन्। तिनै देवताहरूकी माता अदिति पनि आफ्ना पुत्रहरूसँगै पृथ्वीलाई धारणपोषण गर्दछिन्। हे अग्निदेव ! तिमी तिनै देवताहरूले सम्पन्न गर्ने यज्ञको हवि ग्रहण गर।

अधि श्रियं नि दधुश्चारुमस्मिन्दिवो यदक्षी अमृता अकृण्वन्।
अध क्षरन्ति सिन्धवो न सृष्टाः प्र नीचीरग्ने अरुषीरजानन्॥१०॥

अमर देवताहरूले द्युलोकमा सुन्दर तेज स्थापित गरे र विशाल विश्वमा दुई आँखा बनाए। बग्नका लागि नदी फैलिएझैँ ओर्लेर आउने उषादेवीलाई मानिसले त्यसपछि मात्र चिन्न सके।

[सूक्त – ७३]

ऋषि – पराशर शाक्त्य। देवता – अग्नि। छन्द – त्रिष्टुप्।

रयिर्न यः पितृवित्तो वयोधाः सुप्रणीतिश्चिकितुषो न शासुः।
स्योनशीरतिथिर्न प्रीणानो होतेव सद्म विधतो वि तारीत्॥१॥

अग्निदेव मानिसलाई उत्तम कर्ममा प्रेरित गर्दछन्। उनी पैतृक सम्पत्तिझैँ अन्न र ज्ञानी पुरुषझैँ उपदेश दिन्छन्। प्रिय अतिथिजस्ता होताले यजमानलाई बस्ने ठाउँ दिन्छन्।

देवो न यः सविता सत्यमन्मा क्रत्वा निपाति वृजनानि विश्वा।
पुरुप्रशस्तो अमतिर्न सत्य आत्मेव शेवो दिधिषाय्यो भूत्॥२॥

प्रकाशले युक्त सूर्यदेवजस्ता सत्यको ज्ञान भएका अग्निले गरेका असल कामले सबैलाई पापबाट जोगाउँछ। असङ्ख्यले प्रशंसा गर्ने यी अग्निदेव उन्नति गर्दै सन्मार्गमा हिँड्दछन्। यिनी आत्माजत्तिकै आनन्ददायक र सबैले स्वीकार गर्ने योग्य छन्।

देवो न यः पृथिवीं विश्वधाया उपक्षेति हितमित्रो न राजा।
पुरः सदः शर्मसदो न वीरा अनवद्या पतिजुष्टेव नारी॥३॥

अग्निदेव चम्किलो सूर्यजस्तै भएर संसार ढाक्ने, राजाजस्तै भएर हित गर्ने मित्र हुन् र उनी पृथ्वीमा रहेका छन्। पिताका आश्रयमा पुत्र रहेझैँ यिनको आश्रय सबैले पाउँछन्। यी अग्निदेव पतिव्रता स्त्रीझैँ पवित्र र वन्दनीय छन्।

तं त्वा नरो दम आ नित्यमिद्धमग्ने सचन्त क्षितिषु ध्रुवासु।
अधि द्युम्नं नि दधुर्भूर्यस्मिन्भवा विश्वायुर्धरुणो रयीणाम्॥४॥

हे अग्निदेव ! कुव्यवहार नहुने घरमा मानिसहरू सधैँ समिधा प्रदान गरेर तिम्रो सेवा गर्छन्। आकाशका देवताहरूले प्रचण्ड तेज दिएर तिमीलाई परिपूर्ण गराए। तिमी सबैका प्राणरूप हौ। हामीलाई धन र वैभव प्रदान गर।

वि पृक्षो अग्ने मघवानो अश्युर्वि सूरयो ददतो विश्वमायुः।
सनेम वाजं समिथेष्वर्यो भागं देवेषु श्रवसे दधानाः॥५॥

हे अग्निदेव ! धनले सम्पन्न यजमानहरू तिम्रा कृपाले अन्न पाउँछन्। विद्वान् हविदाताले लामो आयु पाऊन्। हामी यशका निमित्त देवताहरूलाई हविको भाग दिऔँ र युद्धमा शत्रुको वैभव जितौँ।

ऋतस्य हि धेनवो वावशानाः स्मदूध्नीः पीपयन्त द्युभक्ताः।
परावतः सुमतिं भिक्षमाणा वि सिन्धवः समया सस्रुरद्रिम्॥६॥

सधैँ दुध दिने तेजस्वी गाईले यज्ञका लागि दुध दिन्छन्। टाढाका पर्वतबाट बग्ने नदीले यज्ञसित सद्बुद्धि पाउने आशा गर्दछन्।

**त्वं अग्ने सुमतिं भिक्षमाणा दिवि श्रवो दधिरे यज्ञियासः।**
**नक्ता च चक्रुरुषसा विरूपे कृष्णं च वर्णमरुणं च सं धुः ॥७॥**

हे अग्निदेव ! यज्ञबाट कल्याणकारी बुद्धिको खोजी गर्दै पूज्य देवताहरू हवि चढाएर अन्न धारण गर्दछन् र। त्यसपछि ती देवताले रात्रि र विभिन्न रूपमा रहने उषादेवीलाई स्थापित गराए। उनै देवताहरूले रात्रिलाई अँध्यारो र उषालाई उज्यालो वर्ण दिए।

**यान्राये मर्तान्त्सुषूदो अग्ने ते स्याम मघवानो वयं च।**
**छायेव विश्वं भुवनं सिसक्ष्यापप्रिवान्रोदसी अन्तरिक्षम् ॥८॥**

हे अग्निदेव ! जुन मानिसलाई धन प्राप्तिका लागि तिमीले प्रेरित गर्छौ, तिनीहरू र हामी धनवान् बनौं। तिमीले आकाश, पृथ्वी र अन्तरिक्षलाई प्रकाशले परिपूर्ण गरेका छौ। सारा दुनियाँ तिम्रै छायाजस्तो बनेर रहेको छ।

**अर्वद्भिरग्ने अर्वतो नृभिर्नॄन्वीरैर्वीरान्वनुयामा त्वोताः।**
**ईशानासः पितृवित्तस्य रायो वि सूरयः शतहिमा नो अश्युः ॥९॥**

हे अग्निदेव ! तिम्रा संरक्षणमा रहँदै हामी आफ्ना अश्वले शत्रुका अश्व, आफ्ना योद्धाले शत्रुका योद्धा र आफ्ना सन्तानले शत्रुका सन्तानलाई पर धपाऔं। पैतृक सम्पत्ति पाएर हामी स्तोताहरू सय वर्षको आयु पूर्ण उपयोग गरौं।

**एता ते अग्न उचथानि वेधो जुष्टानि सन्तु मनसे हृदे च।**
**शकेम रायः सुधुरो यमं तेऽधि श्रवो देवभक्तं दधानाः ॥१०॥**

हे मेधावी इन्द्रदेव ! हाम्रा स्तोत्रले तिम्रो मन र हृदयमा उचित सन्तुष्टि होस्। देवताद्वारा प्रदान गरिएको धन, वैभव र यश धारण गर्दै हामीले सुख प्राप्त गरौं।

## [सूक्त - ७४]

ऋषि – गोतम राहूगण। देवता – अग्नि। छन्द – गायत्री।

**उपप्रयन्तो अध्वरं मन्त्रं वोचेमाग्नये। आरे अस्मे च शृण्वते ॥१॥**

इन्द्रदेवले हाम्रो भावना सुनिदिन्छन्। उनी यज्ञका नजिकै वा टाढा जहाँ उपस्थित भए पनि उनलाई हामी स्तुति र मन्त्र समर्पित गर्दछौं।

**यः स्नीहितीषु पूर्व्यः संजग्मानासु कृष्टिषु। अरक्षद्दाशुषे गयम् ॥२॥**

अग्निदेव सधैं जाज्वल्यमान छन्। प्रजालाई तिनले परस्पर स्नेहसौजन्यले सम्पन्न गराउँछन् र एकत्र भएको दाताको ऐश्वर्य रक्षा गर्दछन्।

**उत ब्रुवन्तु जन्तव उदग्निर्वृत्रहाजनि। धनञ्जयो रणेरणे ॥३॥**

अग्निदेव शत्रुनाशक हुन् र युद्धमा शत्रुलाई पराजित गरेर धन जित्ने गर्दछन्। अग्निदेव प्रकट भइसकेका छन्, सबैले स्तुति गरौं।

**यस्य दूतो असि क्षये वेषि हव्यानि वीतये। दस्मत्कृणोष्यध्वरम् ॥४॥**

हे अग्निदेव ! जुन यजमानका घरबाट तिमी दूतका रूपमा देवताहरूका लागि हवि लैजान्छौ, त्यस घरलाई तिमीले उत्तम प्रकारले दर्शनीय बनाउँछौ।

**तमित्सुहव्यमङ्गिरः सुदेवं सहसो यहो। जना आहुः सुबर्हिषम् ॥५॥**

हे बलका पुत्र इन्द्रदेव ! तिमी यजमानलाई सुन्दर हवि द्रव्यले युक्त, देवताहरूमा श्रेष्ठ र सुन्दर यज्ञबाट परिपूर्ण गराउँछौ भन्ने दुनियाँको भनाइ छ।

**आ च वहासि ताँ इह देवाँ उप प्रशस्तये। हव्या सुश्चन्द्र वीतये ॥६॥**

हे तेजस्वी अग्निदेव ! देवताहरूलाई हाम्रा यज्ञमा स्तुति सुन्न र हवि ग्रहण गर्न लागि तिमी नजिकै लिएर आऊ।

**न योरुपब्दिरश्व्यः शृण्वे रथस्य कच्चन। यदग्ने यासि दूत्यम् ॥७॥**

हे अग्निदेव ! तिमी जति बेला दूत बनेर जान्छौ त्यस बेला तिम्रा गतिमान रथका घोडाको शब्द अलिकति पनि सुनिँदैन।

**त्वोतो वाज्यह्रयोऽभि पूर्वस्मादपरः। प्र दाश्वाँ अग्ने अस्थात् ॥८॥**

हे अग्निदेव ! पहिले असुरक्षित रहने हविदाता यजमान तिम्रो सामर्थ्यद्वारा रक्षित भए। त्यसपछि बलसम्पन्न बनेर हीनताबाट मुक्त भए।

उत द्युमत्सुवीर्यं बृहदग्ने विवाससि। देवेभ्यो देव दाशुषे ॥९॥
हे महान् अग्निदेव ! तिमी देवताहरूलाई हवि प्रदान गर्दछौ। तिमी नै यजमानलाई अत्यन्त तेज र श्रेष्ठ बल प्राप्त गराउँछौ।

[सूक्त - ७५]

ऋषि - गोतम राहूगण। देवता - अग्नि। छन्द - गायत्री।

जुषस्व सप्रथस्तमं वचो देवप्सरस्तमम्। हव्या जुह्वान आसनि ॥१॥
हे अग्निदेव ! देवताहरूका लागि मुखमा हवि बोकेर तिमी अत्यन्त प्रसन्न गराउँछौ। हामीबाट हुने स्तुति वचन तिमी स्वीकार गर।

अथा ते अङ्गिरस्तमाग्ने वेधस्तम प्रियम्। वोचेम ब्रह्म सानसि ॥२॥
अङ्गिराहरूमध्ये श्रेष्ठ, मेधावीहरूमा उत्कृष्ट हे अग्निदेव ! तिम्रा निम्ति अति प्रिय मन्त्र र स्तोत्र हामी पाठ गर्दछौं।

कस्ते जामिर्जनानामग्ने को दाश्वध्वरः। को ह कस्मिन्नसि श्रितः ॥३॥
हे अग्निदेव ! मनुष्यमा तिम्रो बन्धु को छ ? श्रेष्ठ दान गरेर कसले तिम्रो यजन गर्दछ ? तिम्रो स्वरूपलाई कसले जानेको छ ? तिम्रो आश्रयस्थल कहाँ छ ?

त्वं जामिर्जनानामग्ने मित्रो असि प्रियः। सखा सखिभ्य ईड्यः ॥४॥
हे अग्निदेव ! तिमी मनुष्यहरूसित भ्रातृभाव राख्ने, यजमानको रक्षा गर्ने र स्तोताहरूका लागि प्रिय मित्रजस्तै छौ।

यजा नो मित्रावरुणा यजा देवाँ ऋतं बृहत्। अग्ने यक्षि स्वं दमम् ॥५॥
हे अग्निदेव ! हाम्रा निम्ति मित्र र वरुणको यजन गर। विशाल यज्ञ सम्पन्न गर र यज्ञशालामा पूजायोग्य भावले बस।

[सूक्त - ७६]

ऋषि - गोतम राहूगण। देवता - अग्नि। छन्द - त्रिष्टुप।

का त उपेतिर्मनसो वराय भुवदग्ने शंतमा का मनीषा।
को वा यज्ञैः परि दक्षं त आप केन वा ते मनसा दाशेम ॥१॥
हे अग्निदेव ! तिम्रो मन सन्तुष्ट गराउन हामी उपाय के गरौं ? कुन यज्ञमा यजमानले तिम्रो बल बढाउँछन् ? कुन स्तुति तिम्रा लागि सुखप्रद छ ? कुन मनले तिमीलाई हवि प्रदान गरौं ?

एह्यग्न इह होता नि षीदादब्धः सु पुरएता भवा नः।
अवतां त्वा रोदसी विश्वमिन्वे यजा महे सौमनसाय देवान् ॥२॥
हे अग्निदेव ! तिमी हाम्रा यस यज्ञमा आएर होताका रूपमा बस। तिमी अविचलित रूपमा अगुवा होऊ। सर्वव्यापक आकाश र पृथ्वीले तिम्रो रक्षा गरून्। हामीले रोजेको फल पाउनका लागि तिमी देवकार्य सम्पन्न गराऊ।

प्र सु विश्वान्रक्षसो धक्ष्यग्ने भवा यज्ञानामभिशस्तिपावा।
अथा वह सोमपतिं हरिभ्यामातिथ्यमस्मै चकृमा सुदाव्ने ॥३॥
हे अग्निदेव ! तिमी हाम्रा सुकर्ममा बाधा हाल्ने राक्षसहरूलाई राम्ररी डढाऊ। हिंसा गर्नेहरूबाट हाम्रो यज्ञ रक्षा गर। त्यसपछि सोमपान गर्ने इन्द्रदेवलाई उनका अश्वसहित यज्ञमा लिएर आऊ। त्यसबाट हामी उत्तम दानदाता इन्द्रदेवलाई अतिथि सत्कार गरौं।

प्रजावता वचसा वह्निरासा च हुवे नि च सत्सीह देवैः।
वेषि होत्रमुत पोत्रं यजत्र बोधि प्रयन्तर्जनितर्वसूनाम् ॥४॥
हवि भक्षक अग्निदेवलाई हामी प्रजाहरू स्तोत्रले आह्वान गर्दछौं। यजनका योग्य हे अग्निदेव ! तिमी यज्ञमा प्रतिष्ठित र नातिका रूपमा पोषित गरिन योग्य छौ। तिमी धन उत्पन्न गर्ने हौ। धनका निमित्त हाम्रो कामना जान र त्यो पूर्ण गर।

यथा विप्रस्य मनुषो हविर्भिर्देवाँ अयजः कविभिः कविः सन्।
एवा होतः सत्यतर त्वमद्याग्ने मन्द्रया जुह्वा यजस्व ॥५॥
हे अग्निदेव ! तिमी होता र सत्यका रूप हौ। तिमी मेधावीहरूमा पनि श्रेष्ठ छौ। ज्ञानी मानिसहरू हवि प्रदान गरेर देवताहरूका साथ तिमीलाई पूजा गर्दछन्। तिमी प्रसन्नता दिने आहुति ग्रहण गर्दछौ।

[सूक्त - ७७]

ऋषि - गोतम राहूगण। देवता - अग्नि। छन्द - त्रिष्टुप।

**कथा दाशेमाग्नये कास्मै देवजुष्टोच्यते भामिने गीः।**
**यो मर्त्येष्वमृत ऋतावा होता यजिष्ठ इत्कृणोति देवान् ॥१॥**

अग्निदेवका लागि हामी कस्तो खालको हवि दिऔं ? यिनलाई कुनचाहिँ देवप्रिय स्तुतिले प्रकाशित गरौं ? जसले मानिसका बीचमा बसेर देवताहरूलाई हविष्यान्न पुऱ्याउँछ, त्यस्तो यी अग्निदेव अविनाशी, पूज्य, यज्ञकर्म सम्पादक र होता हुन्।

**यो अध्वरेषु शंतम ऋतावा होता तमू नमोभिरा कृणुध्वम्।**
**अग्निर्यद्वेर्मर्ताय देवान्त्स चा बोधाति मनसा यजाति ॥२॥**

यी अग्निदेव यज्ञमा अत्यन्त सुख प्रदान गर्दछन् र होताका रूपमा यज्ञ गर्ने गर्दछन्। हे मनुष्यहरू हो ! अग्निदेवलाई श्रेष्ठ स्तोत्रले अभिवादन गर। अग्निदेव मनुष्यको हितका लागि देवतासमक्ष जान्छन्। देवताहरूलाई चिनेका यी अग्निदेव मनले नै देवताहरूको यजन गर्दछन्।

**स हि क्रतुः स मर्यः स साधुर्मित्रो न भूदद्भुतस्य रथीः।**
**तं मेधेषु प्रथमं देवयन्तीर्विश उप ब्रुवते दस्ममारीः ॥३॥**

अग्निदेव निश्चय नै यज्ञरूप हुन्। यिनी साधुका रूपमा हितकारी छन्। यिनी यजमान र मित्रझैं सहायक पनि छन्। यिनी विलक्षण प्रकारका वीर रथी हुन्। देवत्व प्राप्त गर्न खोज्ने मानिसहरू यज्ञमा दर्शनीय यज्ञदेवलाई सर्वप्रथम उत्तम स्तुति गर्दछन्।

**स नो नृणां नृतमो रिशादा अग्निर्गिरोऽवसा वेतु धीतिम्।**
**तना च ये मघवानः शविष्ठा वाजप्रसूता इषयन्त मन्म ॥४॥**

अग्निदेव मनुष्यमा सर्वोत्कृष्ट छन् र शत्रु विनाशक हुन्। हामीले विचारपूर्वक गरेको स्तुति यिनले स्वीकार गरुन् र रक्षण साधनले हाम्रो रक्षा गरुन्। अत्यन्त ऐश्वर्य र बलले सम्पन्न अग्निदेवले हाम्रो हविष्यान्न सहितको स्तुति प्राप्त गरुन्।

**एवाग्निर्गोतमेभिर्ऋतावा विप्रेभिरस्तोष्ट जातवेदाः।**
**स एषु द्युम्नं पीपयत्स वाजं स पुष्टिं याति जोषमा चिकित्वान् ॥५॥**

सत्ययुक्त, सर्वज्ञ अग्निदेवलाई मेधासम्पन्न गौतमहरूले स्तुति गरे। यज्ञमा अग्निदेवले हवि ग्रहण गरेर, दीप्तिमान सोमपान गरे। ऋषिहरूको भक्ति बुझेर उनी पुष्ट भए।

[सूक्त - ७८]

ऋषि - गोतम राहूगण। देवता - अग्नि। छन्द - गायत्री।

**अभि त्वा गोतमा गिरा जातवेदो विचर्षणे। द्युम्नैरभि प्र णोनुमः ॥१॥**

सृष्टिका समस्त रहस्यलाई देखेका र जानेका हे अग्निदेव ! गोतमवंशी हामीहरू उत्तम वाणीले तेजस्वी मन्त्र गाउँदै तिमीलाई अभिवादन गर्दछौं।

**तमु त्वा गोतमो गिरा रायस्कामो दुवस्यति। द्युम्नैरभि प्र णोनुमः ॥२॥**

हे अग्निदेव ! धनको कामना गर्दै गोतमवंशीहरू उत्तम वाणीले तिम्रो परिचर्या गर्दछन्। तेजस्वी स्तोत्रले हामी पनि तिमीलाई अभिवादन गर्दछौं।

**तमु त्वा वाजसातममङ्गिरस्वद्धवामहे। द्युम्नैरभि प्र णोनुमः ॥३॥**

विपुल अन्न प्रदान गर्ने हे अग्निदेव ! अङ्गिराले झैं हामी तिम्रो आह्वान गर्दछौं र तेजस्वी मन्त्रले तिमीलाई नमस्कार गर्दछौं।

**तमु त्वा वृत्रहन्तमं यो दस्यूँरवधूनुषे। द्युम्नैरभि प्र णोनुमः ॥४॥**

राक्षसलाई थर्काउने, अन्धकाररूपी असुर संहार गर्ने अग्निदेवलाई हामी तेजस्वी मन्त्रले स्तुति गर्दछौं।

**अवोचाम रहूगणा अग्नये मधुमद्वचः द्युम्नैरभि प्र णोनुमः ॥५॥**

हामी रहुगणवंशीहरू अग्निदेवका लागि मधुर स्तुति प्रस्तुत गर्दछौं। तेजस्वी मन्त्रले उनलाई नमस्कार गर्दछौं।

## [सूक्त - ७९]

**ऋषि** - गोतम राहूगण। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप् उष्णिक् गायत्री।

**हिरण्यकेशो रजसो विसारेऽहिर्धुनिर्वात इव ध्रजीमान्।**
**शुचिभ्राजा उषसो नवेदा यशस्वतीरपस्युवो न सत्याः ॥१॥**

हे अग्निदेव ! स्वर्णिम ज्वालाले युक्त, संसारका विस्तारक, मेघलाई कँपाउने, वायुझैँ वेगवान् छौ। शुभ्र कान्तियुक्त अग्निदेव उषादेवीका लागि अन्तरिक्षको विस्तार गर्छन्। आफ्ना काममा लाग्ने, सरल यशसम्पन्न उषादेवी यस कुराबाट अनभिज्ञ छिन्।

**आ ते सुपर्णा अमिनन्तँ एवैः कृष्णो नोनाव वृषभो यदीदम्।**
**शिवाभिर्न स्मयमानाभिरागात्पतन्ति मिहः स्तनयन्त्यभ्रा ॥२॥**

हे अग्निदेव ! उकालो लागेको तिम्रो दीप्तिमान् रश्मि बादलसित ठोक्किएपछि वर्षा गराउने कालो बादल गर्जिन थाल्दछ। त्यस बेला विद्युत्युक्त मेघले गर्जना गर्दै मानौं हास्यमयी वर्षा गराउँछ।

**यदीमृतस्य पयसा पियानो नयन्नृतस्य पथिभी रजिष्ठैः।**
**अर्यमा मित्रो वरुणः परिज्मा त्वचं पृञ्चन्त्युपरस्य योनौ ॥३॥**

अग्निदेवले यज्ञका रसद्वारा चराचर जगत्लाई पोषण गर्दछन्। यज्ञको प्रभाव सरल मार्गबाट अन्तरिक्षमा पुऱ्याउँछन्। त्यस बेला अर्यमा, मित्र, वरुण र मरुत्गण मेघको उत्पत्ति स्थलमा जल स्थापित गराउँछन्।

**अग्ने वाजस्य गोमत ईशानः सहसो यहो।**
**अस्मे धेहि जातवेदो महि श्रवः ॥४॥**

बलपूर्वक उत्पन्न हुने हे ज्ञानसम्पन्न अग्निदेव ! तिमी अन्न र गाई आदि पशुधनले सम्पन्न छौ। हाम्रा लागि पनि तिमी अपार वैभव प्रदान गर।

**स इधानो वसुष्कविरग्निरीडेन्यो गिरा। रेवदस्मभ्यं पुर्वणीक दीदिहि ॥५॥**

ज्वालाका रूपमा विभिन्न मुख भएका जाज्वल्यमान हे अग्निदेव ! तिमी त्रिकालदर्शी एवं सबैका आश्रयस्थल हौ। दिव्य स्तुतिले सन्तुष्ट भएर यज्ञमा सर्वप्रथम उपस्थित हुने तिमी आफ्नो तेजस्विताले हामीलाई अपार धनवैभव प्रदान गर।

**क्षपो राजन्नुत त्मनाग्ने वस्तोरुतोषसः। स तिग्मजम्भ रक्षसो दह प्रति ॥६॥**

ज्वालारूपी विकराल दाह्रा हुने हे अग्निदेव ! आफ्ना तीक्ष्ण स्वभावले तिमी असुर संहार गर्दछौ। त्यसैले रात्रि, दिन, उषाकाल र हाम्रा सबै हानीकारक असुर भस्म गर।

**अवा नो अग्न ऊतिभिर्गायत्रस्य प्रभर्मणि। विश्वासु धीषु वन्द्य ॥७॥**

हे अग्निदेव ! तिमी सबै यज्ञमा वन्दनीय छौ। गायत्री छन्दका सामगानले स्तुति गर्दाखेरि प्रसन्न होऊ र तिमी आफ्ना संरक्षण साधनले हाम्रो रक्षा गर।

**आ नो अग्ने रयिं भर सत्रासाहं वरेण्यं। विश्वासु पृत्सु दुष्टरम् ॥८॥**

हे अग्निदेव ! दरिद्रता नाश गर्ने, शत्रु पराजित गराउने, वरण गर्न योग्य छौ। हामीलाई तिमी श्रेष्ठ ऐश्वर्य प्रदान गर।

**आ नो अग्ने सुचेतुना रयिं विश्वायुपोषसम्। मार्डीकं धेहि जीवसे ॥९॥**

हे अग्निदेव ! तिमी उत्तम ज्ञानयुक्त जीवनलाई भरणपोषण गर्दै सामर्थ्य प्रदान गर्दछौ। हाम्रो दीर्घ जीवनका लागि हामीलाई सुखदायक धन प्रदान गर।

**प्र पूतास्तिग्मशोचिषे वाचो गोतमाग्नये। भरस्व सुम्नयुर्गिरः ॥१०॥**

हे गोतम ! सुखको इच्छा गर्दै तीक्ष्ण ज्वाला भएका अग्निदेवका लागि तिमी पवित्र वचनले युक्त स्तुति गर।

**यो नो अग्नेऽभिदासत्यन्ति दूरे पदीष्ट सः। अस्माकमिद्वृधे भव ॥११॥**

हे अग्निदेव ! नजिकमा रहेको होस् वा टाढा होस्, जुन शत्रुले हामीलाई आफ्नो वशमा बनाउन खोज्छन्, तिनको पतन होस्। हामीलाई तिमी उन्नति गराउँछौ।

**सहस्राक्षो विचर्षणिरग्नी रक्षांसि सेधति। होता गृणीत उक्थ्यः ॥१२॥**

हे अग्निदेव ! तिमी सहस्र ज्वालारूपी नेत्रले सबैलाई हेर्दछौ। तिमी प्रशंसनीय होताका रूपमा स्तुतिले प्रशंसित हुन्छौ।

[सूक्त - ८०]

ऋषि – गोतम राहूगण। देवता – इन्द्र। छन्द – पंक्ति।

**इत्था हि सोम इन्मदे ब्रह्मा चकार वर्धनम्।**
**शविष्ठ वज्रिन्नोजसा पृथिव्या निः शशा अहिमर्चन्ननु स्वराज्यम् ॥१॥**

हे वज्र धारण गर्ने शक्तिशाली इन्द्रदेव ! ब्रह्मनिष्ठहरूद्वारा प्रदान गरिएका दिव्य गुणले सम्पन्न सोमरस पान गरेर तिमीले आफ्नो उत्साह बढायौ। आफ्नो सामर्थ्यले देव समुदायको हानी गर्ने दुराचारीलाई मारेर पृथ्वीबाट हटाइदियौ।

**स त्वामदद्वृषा मदः सोमः श्येनाभृतः सुतः।**
**येना वृत्रं निरद्भ्यो जघन्थ वज्रिन्नोजसार्चन्ननु स्वराज्यम् ॥२॥**

हे वज्रधारी इन्द्रदेव ! बाजपक्षीले तेज गतिमा ल्याएको पेलेर तयार, बलवर्धक सोमरसले तिम्रो हर्ष बढायो। त्यसपछि तिमीले आफ्ना बलले वृत्रलाई मारेर पानीबाट बाहिर फ्याँकिदियौ। यसै गरी आफ्नो राज्यक्षेत्र र देवसमुदायलाई सम्मानित गरायौ।

**प्रेह्यभीहि धृष्णुहि न ते वज्रो नि यंसते।**
**इन्द्र नृम्णं हि ते शवो हनो वृत्रं जया अपोऽर्चन्ननु स्वराज्यम् ॥३॥**

हे इन्द्रदेव ! तिमी शत्रुमाथि चारै तिरबाट आक्रमण गरेर तिनलाई नष्ट गर। तिम्रो वज्र आफूजस्तै शक्तिशाली शत्रुलाई पनि तिरस्कार गर्न सक्दछ। आफूसुहाउँदो साम्राज्यको कामना गर्दै तिमी वृत्रलाई वध गर र विजय प्राप्त गरेर जलमा बगाऊ।

**निरिन्द्र भूम्या अधि वृत्रं जघन्थ निर्दिवः।**
**सृजा मरुत्वतीरव जीवधन्या इमा अपोऽर्चन्ननु स्वराज्यम् ॥४॥**

हे इन्द्रदेव ! तिमीले वृत्रलाई पृथ्वीबाट घिसारेर आकाशसम्म उचाल्यौ। त्यसपछि सखाप नै हुने गरी त्यसलाई नष्ट गर्‍यौ। तिमीले जीवन धारण गराएका मरुत्‌गणका साथ बग्नका लागि जल छोड्यौ। तिमी आफ्नो सामर्थ्यमा प्रतिष्ठित भएका छौ।

**इन्द्रो वृत्रस्य दोधतः सानुं वज्रेण हीडितः।**
**अभिक्रम्याव जिघ्नतेऽपः सर्माय चोदयन्नर्चन्ननु स्वराज्यम् ॥५॥**

इन्द्रदेव रिसाए र डरले काँपिरहेका वृत्रका थुतुनामा वज्रले प्रहार गरे। उनले बग्नका लागि जलका प्रवाहलाई प्रेरित गरे। इन्द्रदेवले यसै गरी आफ्नो सामर्थ्य प्रकट गरे।

**अधि सानौ नि जिघ्नते वज्रेण शतपर्वणा।**
**मन्दान इन्द्रो अन्धसः सखिभ्यो गातुमिच्छत्यर्चन्ननु स्वराज्यम् ॥६॥**

सोमले आनन्दित इन्द्रदेवले सय वटा तीक्ष्ण शूल भएका वज्रले वृत्रका थुतुनामा प्रहार गरे। उनी मित्रहरूका आत्मसामर्थ्यबाट प्रकाशित हुन्छन्।

**इन्द्र तुभ्यमिदद्रिवोऽनुत्तं वज्रिन्वीर्यम्।**
**यद्ध त्यं मायिनं मृगं तमु त्वं माययावधीरर्चन्ननु स्वराज्यम् ॥७॥**

हे पर्वतवासी, स्वराज्यको अर्चना गर्नेहरूका सहायक, वज्रधारी इन्द्रदेव ! तिम्रो शक्ति शत्रुहरूबाट अपराजेय छ। मृगको रूप धारण गर्ने छली छद्मवेशी वृत्रको हनन गर्नका लागि तिमी कूटनीतिको पनि सहारा लिन्छौ।

**वि ते वज्रासो अस्थिरन्नवतिं नाव्याः अनु।**
**महत्त इन्द्र वीर्यं बाह्वोस्ते बलं हितमर्चन्ननु स्वराज्यम् ॥८॥**

हे इन्द्रदेव ! नब्बे वटा डुङ्गाहरूले घेरिएका वृत्रलाई विचलित गराउन पनि तिम्रो वज्र समर्थ छ। तिम्रो पराक्रम अति महान् छ। तिम्रा भुजाको बल अपरिमित छ। तिमी आत्म सामर्थ्यले प्रकाशित होऊ।

**सहस्रं साकमर्चत परि ष्टोभत विंशतिः।**
**शतैनमन्वनोनवुरिन्द्राय ब्रह्मोद्यतमर्चन्ननु स्वराज्यम् ॥९॥**

हे मनुष्य ! तिमीहरू सहस्रौंको सङ्ख्यामा जम्मा भएर इन्द्रदेवको स्तवन गर। बीसौं स्तोत्रको गान गर। उनका निम्ति सयौं अनुनय अर्चना गर। इन्द्रदेवका लागि उत्तम मन्त्र प्रयोग गर। इन्द्रदेव आफ्ना अत्मसामर्थ्यले प्रकाशित होऊन्।

**इन्द्रो वृत्रस्य तविषीं निरहन्त्सहसा सहः ।**
**महत्तदस्य पौंस्यं वृत्रं जघन्वाँ असृजदर्चन्ननु स्वराज्यम् ॥१०॥**

इन्द्रदेवले आफ्ना सामर्थ्यले वृत्रका सेनासँग सङ्घर्ष गरेर उसको बल क्षीण गराए। वृत्रलाई मारेर उनी आफ्नो सामर्थ्यबाट प्रकाशित भए।

**इमे चित्तव मन्यवे वेपेते भियसा मही ।**
**यदिन्द्र वज्रिन्नोजसा वृत्रं मरुत्वाँ अवधीरर्चन्ननु स्वराज्यम् ॥११॥**

हे वज्रधारी इन्द्रदेव ! तिमीले बलशाली मरुत्हरूका सहायताले वृत्रासुरको वध गर्‍यौ। त्यस बेला तिम्रा रिसका अगाडि व्यापक आकाश र पृथ्वी भयले प्रकम्पित भए। तिमी आफ्नो सामर्थ्यबाट प्रकाशित भयौ।

**न वेपसा न तन्यतेन्द्रं वृत्रो वि बीभयत् ।**
**अभ्येनं वज्र आयसः सहस्रभृष्टिरायतार्चन्ननु स्वराज्यम् ॥१२॥**

वृत्रासुरले इन्द्रदेवलाई आफ्ना सामर्थ्यले कम्पित गराउन सकेन र गर्जनाले तर्साउन पनि सकेन। इन्द्रदेवले वृत्रमाथि सहस्रौं धार भएका वज्रले चोटिलो प्रहार गरे। यसै गरी इन्द्रदेवले आफ्ना सामर्थ्यअनुकूलका कर्मलाई सम्पन्न गरे।

**यद्वृत्रं तव चाशनिं वज्रेण समयोधयः ।**
**अहिमिन्द्र जिघांसतो दिवि ते बद्बधे शवोऽर्चन्ननु स्वराज्यम् ॥१३॥**

हे इन्द्रदेव ! वृत्रद्वारा फ्याँकिएका तीक्ष्ण वज्रको सामना तिमीले आफ्नै वज्रले गर्‍यौ। वृत्रलाई मार्ने तिम्रा इच्छाले तिम्रो बल आकाशमा स्थापित भयो। तिमीले यसै गरी आत्मसामर्थ्यको अनुरूप कामलाई प्रदर्शित गर्‍यौ।

**अभिष्टने ते अद्रिवो यत्स्था जगच्च रेजते ।**
**त्वष्टा चित्तव मन्यव इन्द्र वेविज्यते भियार्चन्ननु स्वराज्यम् ॥१४॥**

हे वज्रधारी इन्द्रदेव ! तिम्रो गर्जनाले संसारका सबै स्थावरजङ्गम कम्पित हुन्छन्। तिम्रा रिसका अगाडि त्वष्टादेव पनि कम्पित हुन्छन्। आफ्नो सामर्थ्यअनुकूल तिमी आफ्ना काम प्रस्तुत गर्दछौ।

**नहि नु यादधीमसीन्द्रं को वीर्या परः ।**
**तस्मिन्नृम्णमुत क्रतुं देवा ओजांसि सं दधुरर्चन्ननु स्वराज्यम् ॥१५॥**

इन्द्रदेवको सामर्थ्य बुझ्न कोही पनि समर्थ छैन। उनीजत्तिको पराक्रम र पुरुषार्थ गर्न सक्ने अन्यत्र कोही पनि छैन। देवताहरूले उनमा सबै बल, ऐश्वर्य र क्षमताहरू स्थापित गरेका छन्। त्यसैले उनी आत्मपुरुषका सामर्थ्यले प्रकाशित भएका छन्।

**यामथर्वा मनुष्पिता दध्यङ् धियमत्नत ।**
**तस्मिन्ब्रह्माणि पूर्वथेन्द्र उक्था समग्मतार्चन्ननु स्वराज्यम् ॥१६॥**

ऋषि अथर्वा, पालनकर्ता मनु र दध्यङ् ऋषिले पहिलेकै जसरी आफ्ना बुद्धिले इन्द्रदेवका लागि मन्त्रीरूपी स्तुति गाए। इन्द्रदेव आफ्नै सामर्थ्यका प्रभावले प्रकाशित भएका छन्।

**[सूक्त - ८१]**

**ऋषि** – गोतम राहूगण। **देवता** – इन्द्र। **छन्द** – पंक्ति।

**इन्द्रो मदाय वावृधे शवसे वृत्रहा नृभिः ।**
**तमिन्महत्स्वाजिषूतेमर्भे हवामहे स वाजेषु प्र नोऽविषत् ॥१॥**

हर्ष र उत्साहवर्धन गर्ने कामनाले स्तोताहरूबाट इन्द्रदेवको यश विस्तार हुन्छ। त्यसै यशका कारण सानाठूला सबै युद्धमा हामी रक्षकका रूपमा इन्द्रदेवलाई आह्वान गर्दछौं। ती इन्द्रदेवले युद्धमा हाम्रो रक्षा गरुन्।

**असि हि वीर सेन्योऽसि भूरि परादृदिः ।**
**असि दभ्रस्य चिद्वृधो यजमानाय शिक्षसि सुन्वते भूरि ते वसु ॥२॥**

हे वीर सैन्यबलले सम्पन्न इन्द्रदेव ! अनुयायीको उन्नति गर्न तिमी विपुल धन दिन्छौ। तिमी सोमयाग गर्ने यजमानका लागि विपुल धन प्राप्तिका लागि प्रेरणा दिन्छौ।

यदुदीरत आजयो धृष्णवे धीयते धना।
युक्ष्वा मदच्युता हरी कं हनः कं वसौ दधोऽस्माँ इन्द्र वसौ दधः ॥३॥

युद्ध भएपछि शत्रुविजयीले नै धन प्राप्त गर्दछ। हे इन्द्रदेव ! युद्धपछि उमङ्गको मद बगाउने अश्वलाई तिमी रथमा जोत। तिमी कसको वध गर्छौ र कसलाई धन दिन्छौ भन्ने सबै तिमीमा निर्भर छ। त्यसैले हे इन्द्रदेव ! हामीलाई ऐश्वर्यले सम्पन्न गराऊ।

क्रत्वा महाँ अनुष्वधं भीम आ वावृधे शवः।
श्रिय ऋष्व उपाकयोर्नि शिप्री हरिवान्दधे हस्तयोर्वज्रमायसम् ॥४॥

भीषण शक्तिले सम्पन्न इन्द्रदेव सोमरस पान गरेर आफ्नो बल वृद्धि गर्दछन्। त्यसपछि सौन्दर्यशाली र श्रेष्ठ शिरस्त्राण धारण गर्ने इन्द्रदेव अश्वसहितका रथमा बसेर दाहिने हातको गहनाजस्तो फलामे वज्र उचाल्दछन्।

आ पप्रौ पार्थिवं रजो बद्बधे रोचना दिवि।
न त्वावाँ इन्द्र कश्चन न जातो न जनिष्यतेऽति विश्वं ववक्षिथ ॥५॥

हे इन्द्रदेव ! तिमीले आफ्ना सामर्थ्यले पृथ्वी र अन्तरिक्षलाई पूर्ण गराएका छौ। तिमीले आकाशमा प्रकाशमान नक्षत्रहरू स्थापित गरायौ। हे इन्द्रदेव ! उत्पन्न भइसकेका वा अब उत्पन्न हुनेहरूमा तिमीजत्तिको अर्को कोही पनि छैन। तिमी नै सम्पूर्ण विश्वयका नियामक हौ।

यो अर्यो मर्तभोजनं परादाति दाशुषे।
इन्द्रो अस्मभ्यं शिक्षतु वि भजा भूरि ते वसु भक्षीय तव राधसः ॥६॥

हे इन्द्रदेव ! हविदाताका लागि तिमी जुन उपयोगी पदार्थ दिन्छौ, त्यो हामीलाई पनि प्रदान गर। तिमीसित जुन विपुल धनको भण्डार छ, त्यो हामीलाई बाँडिदेऊ। हामी त्यस्ता भागको उपयोग गर्न सकौं।

मदेमदे हि नो ददिर्यूथा गवामृजुक्रतुः।
सं गृभाय पुरू शतोभयाहस्त्या वसु शिशीहि राय आ भर ॥७॥

हे इन्द्रदेव ! यज्ञकर्ममा सोमरसले तिमी अत्यन्त प्रफुल्लित भएर हामीलाई गाई आदि विपुल धन दिन्छौ। तिमी दुवै हातले सयकडौं किसिमका वैभव हामीलाई प्रदान गर। हामी वीरतापूर्ण यशका भागीदार बनौं।

मादयस्व सुते सचा शवसे शूर राधसे।
विद्मा हि त्वा पुरूवसुमुप कामान्त्ससृज्महेऽथा नोऽविता भव ॥८॥

हे इन्द्रदेव ! बल वृद्धिका लागि, हविष्यान्न ग्रहण गर्नका लागि र तयार पारिएको सोमपान गर्नका लागि तिमी हाम्रा यज्ञस्थलमा आऊ र सोमपान गरेर हर्षित होऊ। तिमी विपुल सम्पदाका स्वामी मानिएका छौ। तिमी इच्छा पूरा गराउने हाम्रा रक्षक हौ।

एते त इन्द्र जन्तवो विश्वं पुष्यन्ति वार्यम्।
अन्तर्हि ख्यो जनानामर्यो वेदो अदाशुषां तेषां नो वेद आ भर ॥९॥

हे स्वामी इन्द्रदेव ! तिमीले स्वीकार गर्न योग्य पदार्थ सबै प्राणीहरूले वृद्धि गराउँछन्। कृपणको गुप्त धन तिमीलाई थाहा छ। त्यो धन फेला पारेर हामीलाई देऊ।

[सूक्त - ८२]

ऋषि - गोतम राहूगण। देवता - इन्द्र। छन्द - पंक्ति जगती।

उपो षु शृणुही गिरो मघवन्मातथा इव।
यदा नः सूनृतावतः कर आदर्थयास इद्योजा न्विन्द्र ते हरी ॥१॥

हे धनवान् इन्द्रदेव ! हाम्रो स्तोत्र नजिकैबाट राम्ररी सुन। हामीलाई सत्यवादी बनाऊ। हाम्रा स्तुतिहरू ग्रहण गर्नका लागि तिमी आउने अश्व तयार गर।

अक्षन्नमीमदन्त ह्यव प्रिया अधूषत।
अस्तोषत स्वभानवो विप्रा नविष्ठया मती योजा न्विन्द्र ते हरी ॥२॥

हे इन्द्रदेव ! तिम्रो अन्नले तृप्त भएका ब्राह्मणहरूले आफ्नो आनन्द व्यक्त गर्दै शिर हल्लाए। त्यसपछि उनीहरूले अरू नयाँ स्तोत्र पाठ गरे। अब तिमी यज्ञमा प्रस्थान गर्नका लागि रथमा अश्व नियोजित गर।

सुसंदृशं त्वा वयं मघवन्वन्दिषीमहि।
प्र नूनं पूर्णवन्धुरः स्तुतो याहि वशाँ अनु योजा न्विन्द्र ते हरी ॥३॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! सबै प्राणीहरूप्रति अनुग्रहको दृष्टि राख्ने भएकाले हामी तिम्रो अर्चना गर्दछौं। स्तोतालाई दिन तयार गरेका धनले तिम्रो रथ परिपूर्ण छ। तिमी रुचाएका यजमानसमक्ष तुरुन्तै आउँछौ। हे स्तुत्य इन्द्रदेव ! तिमी हरी नामका अश्वलाई रथमा नियोजित गर।

स घा तं वृषणं रथमधि तिष्ठाति गोविदम्।
यः पात्रं हारियोजनं पूर्णमिन्द्र चिकेतति योजा न्विन्द्र ते हरी ॥४॥

हे इन्द्रदेव ! तिमी अन्न सोम आदि सहित गाई पनि दिन सक्छौ। तिमीले चढ्ने गरेको रथ समर्थ र बलियो छ भन्ने हामी राम्ररी जान्दछौं। त्यसैले हे इन्द्रदेव ! तिमी आफ्ना घोडा रथमा नार।

युक्तस्ते अस्तु दक्षिण उत सव्यः शतक्रतो।
तेन जायामुप प्रियां मन्दानो याह्यन्धसो योजा न्विन्द्र ते हरी ॥५॥

हे शतकर्मा इन्द्रदेव ! तिम्रा रथका दायाँबायाँ दुवैतिर दुई अश्व नारिएका छन्। दुई अश्व नारिएको त्यही रथ लिएर प्रिय पत्नीसमक्ष जाऊ। उसै रथबाट आएर हाम्रो हविष्यान्न ग्रहण गरेर हर्षित होऊ।

युनज्मि ते ब्रह्मणा केशिना हरी उप प्र याहि दधिषे गभस्त्योः।
उत्त्वा सुतासो रभसा अमन्दिषुः पूषण्वान्वज्रिन्त्समु पत्न्यामदः ॥६ ॥

हे वज्रधारी इन्द्रदेव ! लामा जगर भएका तिम्रा अश्वलाई हामी मन्त्रयुक्त स्तोत्रले रथमा नार्दछौं। तिमी आफ्नै हातले तिनको लगाम पक्रेर घर जाऊ। वेगपूर्वक धारो लाग्ने सोमरसले हर्षित गरायो। घरमा पत्नीसहित सोमरसले आनन्दित भएर उन्नति गर।

[सूक्त - ८३]

ऋषि - गोतम राहूगण। देवता - इन्द्र। छन्द - जगती।

अश्वावति प्रथमो गोषु गच्छति सुप्रावीरिन्द्र मर्त्यस्तवोतिभिः।
तमित्पृणक्षि वसुना भवीयसा सिन्धुमापो यथाभितो विचेतसः ॥१॥

हे इन्द्रदेव ! तिम्रा सामर्थ्यले सुरक्षित तिम्रा उपासकहरू अश्व र गाईका रूपमा धन पाएर उन्नति गर्दछन्। जुनसुकै ठाउँको पानी समुद्रमा पुगेझैं तिम्रो सम्पूर्ण धन उपासकलाई पुग्दछ र त्यसबाट ऊ अति नै सन्तुष्ट हुन्छ।

आपो न देवीरुप यन्ति होत्रियमवः पश्यन्ति विततं यथा रजः।
प्राचैर्देवासः प्र णयन्ति देवयुं ब्रह्मप्रियं जोषयन्ते वरा इव ॥२॥

होतालाई पात्रको जलधारा प्राप्त भएझैं अन्तरिक्षबाट यज्ञ देखेपछि देवगण आफ्ना प्रिय स्तोताहरूका नजिक पुग्दछन् र उनीहरूका मन्त्र र स्तुति ग्रहण गर्दछन्। त्यसपछि देवगणले स्तोताहरूलाई पूर्वतिर अथवा उहिलेको उत्तम मार्गमा लैजान्छन्।

अधि द्वयोरदधा उक्थ्यं वचो यतस्रुचा मिथुना या सपर्यतः।
असंयत्तो व्रते ते क्षेति पुष्यति भद्रा शक्तिर्यजमानाय सुन्वते ॥३॥

हे इन्द्रदेव ! आपसमा जोडिएका दुई वटा अन्नपात्र तिम्रा निमित्त समर्पित हुन्। स्तुति वचनका साथ तिमी ती पात्रहरू स्वीकार गर्दछौ। जुन स्तोता तिम्रा नियममा रहेको छ, त्यसको रक्षा तिमीले गर्दछौ र पुष्टि प्रदान गर्दछौ। सोमयाग गर्ने यजमानलाई तिमी कल्याणकारी शक्ति दिन्छौ।

आदङ्गिराः प्रथमं दधिरे वय इद्धाग्नयः शम्या ये सुकृत्यया।
सर्वं पणेः समविन्दन्त भोजनमश्वावन्तं गोमन्तमा पशुं नरः ॥४॥

हे इन्द्रदेव ! अङ्गिराले आफ्ना उत्तम कर्मले अग्नि प्रज्वलित गरेर सर्वप्रथम हविष्यान्न प्रदान गरे। त्यसपछि ती श्रेष्ठ पुरुषले अश्व, गाई आदि पशुरूपी धन र खाद्यान्न पाए।

यज्ञैरथर्वा प्रथमः पथस्तते ततः सूर्यो व्रतपा वेन आजनि।
आ गा आजदुशना काव्यः सचा यमस्य जातममृतं यजामहे ॥५॥

सर्वप्रथम अथर्वाले यज्ञका सम्पूर्ण मार्गहरू विस्तृत गरे। त्यसपछि कडा नियम पालन गर्दै सूर्यदेव प्रकट भए। त्यसपछि उशनाले सबै गाई बाहिर निकाले। यस जगत्को नियम बनाउने, पालन गर्ने र गराउने अविनाशी इन्द्रदेवको पूजा हामी सबै गर्दछौं।

बर्हिर्वा यत्स्वपत्याय वृज्यतेऽर्को वा श्लोकमाघोषते दिवि।
ग्रावा यत्र वदति कारुरुक्थ्य१स्तस्येदिन्द्रो अभिपित्वेषु रण्यति ॥६॥

जुन घरमा उत्तम यज्ञ आदि कर्म गर्नका लागि कुश काटिन्छ, सूर्योदयपछि आकाशमा जहाँबाट स्तोत्रपाठ गुँन्दछ, जहाँ उक्ति वचनसहित सोम कुटेका ढुङ्गा थर्किन्छन्, इन्द्रदेव तिनैकहाँ हवि द्रव्य पान गरेर आनन्द प्राप्त गर्दछन्।

[सूक्त - ८४]

ऋषि - गोतम राहूगण। देवता - इन्द्र। छन्द - अनुष्टुप् उष्णिक् गायत्री त्रिष्टुप् बृहती

असावि सोम इन्द्र ते शविष्ठ धृष्णवा गहि।
आ त्वा पृणक्त्विन्द्रियं रजः सूर्यो न रश्मिभिः ॥१॥

हे शत्रु पराजित गर्ने शक्तिशाली इन्द्रदेव ! सूर्यदेवको किरणरूपी शक्ति अन्तरिक्षमा व्याप्त छ। तिमीभित्र पनि सोमपान गरेपछि अपार शक्तिको सञ्चार होस्।

इन्द्रमिद्धरी वहतोऽप्रतिधृष्टशवसम्।
ऋषीणां च स्तुतीरुप यज्ञं च मानुषाणाम् ॥२॥

अपराजये शक्तिले सम्पन्न इन्द्रदेवका लागि उनका अश्व यज्ञशालामा पुऱ्याऔं। त्यहाँ याजक ऋषिहरूद्वारा स्तुति गान भइरहेको छ।

आ तिष्ठ वृत्रहन्रथं युक्ता ते ब्रह्मणा हरी।
अर्वाचीनं सु ते मनो ग्रावा कृणोतु वग्नुना ॥३॥

हे शत्रुलाई पराजित गर्ने इन्द्रदेव ! मन्त्रका बलले घोडा नारेका आफ्ना रथमा तिमी बसेका बेला सोम कुटिरहेका ढुङ्गाका ध्वनिले तिम्रो मन त्यतै आकर्षित गरोस्।

इममिन्द्र सुतं पिब ज्येष्ठममर्त्यं मदम्।
शुक्रस्य त्वाभ्यक्षरन्धारा ऋतस्य सादने ॥४॥

हे इन्द्रदेव ! अविनाशी, श्रेष्ठ, आनन्दवर्धक सोमरस तिमी पान गर। यज्ञस्थलमा शोधन गरिएको सोमरस तिमीतिर प्रवाहित भइरहेको छ।

इन्द्राय नूनमर्चतोक्थानि च ब्रवीतन।
सुता अमत्सुरिन्दवो ज्येष्ठं नमस्यता सहः ॥५॥

हे ऋत्विक्हरू हो ! आनन्दवर्धक, पवित्र सोमरस समर्पित गरेर विभिन्न स्तोत्र गाउँदै तिमीहरू सबैले इन्द्रदेवको पूजा गर। अनि सामर्थ्यशाली इन्द्रदेवलाई नमस्कार गर।

नकिष्ट्वद्रथीतरो हरी यदिन्द्र यच्छसे।
नकिष्ट्वानु मज्मना नकिः स्वश्व आनशे ॥६॥

अश्वशक्तिले चल्ने रथमा बसेका हे इन्द्रदेव ! तिमीभन्दा धेरै पराक्रम भएको अर्को कोही पनि छैन। तिमीजस्तो कुनै अर्को अश्वपालक पनि छैन।

य एक इद्विदयते वसु मर्ताय दाशुषे। ईशानो अप्रतिष्कुत इन्द्रो अङ्ग ॥७॥

हे प्रिय याजकहरू हो ! दानशील इन्द्रदेव मानिसलाई धन दिन्छन्। उनलाई कसैले रोक्न सक्दैन। ती इन्द्रदेव मात्रै सबै प्राणीका अधिपति हुन्।

कदा मर्तमराधसं पदा क्षुम्पमिव स्फुरत्।
कदा नः शुश्रवद्गिर इन्द्रो अङ्ग ॥८॥

इन्द्रदेवले कहिले हाम्रो स्तुति सुन्लान् ? आराधना नगर्नेलाई बेकामे विरुवाझैं उनले कहिले नष्ट गर्लान् ?

यश्चिद्धि त्वा बहुभ्य आ सुतावाँ आविवासति।
उग्रं तत्पत्यते शव इन्द्रो अङ्ग ॥९॥

यज्ञ गर्ने असङ्ख्य यजमानहरूमध्ये जसले सोमयज्ञ गरेर तिम्रो आराधना गर्दछ, त्यसलाई हे इन्द्रदेव ! तिमी शीघ्र नै बलसम्पन्न बनाइदिन्छौ।

स्वादोरित्था विषूवतो मध्वः पिबन्ति गौर्यः।
या इन्द्रेण सयावरीर्वृष्णा मदन्ति शोभसे वस्वीरनु स्वराज्यम् ॥१०॥

भक्तहरूमाथि कृपा बर्साउने इन्द्रदेवसित राम्रा गाईहरू आनन्दपूर्वक रहन्छन्। भूमिमा स्वराज्यको मर्यादाअनुरूप उम्रिएको स्वादिलो मधुर रस तिनले पान गर्दछन्।

आ अस्य पृशनायुवः सोमं श्रीणन्ति पृश्नयः ।
प्रिया इन्द्रस्य धेनवो वज्रं हिन्वन्ति सायकं वस्वीरनु स्वराज्यम् ॥११॥

इन्द्रदेवलाई स्पर्श गर्ने सेता गाई दूध दिएर उनका वज्रलाई प्रेरणा दिन्छन्। त्यसपछि तिनीहरू स्वराज्यमै रहन्छन्।

ता अस्य नमसा सहः सपर्यन्ति प्रचेतसः ।
व्रतान्यस्य सश्चिरे पुरूणि पूर्वचित्तये वस्वीरनु स्वराज्यम् ॥ १२ ॥

ज्ञानयुक्त किरणहरू इन्द्रदेवकै प्रभावको पूजन गर्दछन्। पहिले भइसकेको सम्झने इन्द्रदेवले पहिलेका कार्यको सम्झना गराउँछन् र स्वराज्यका अनुशासनमै रहन्छन्।

इन्द्रो दधीचो अस्थभिर्वृत्राण्यप्रतिष्कुतः । जघान नवतीर्नव ॥१३॥

अपराजित इन्द्रदेवले दधीचिका हड्डीले उनान्सय राक्षसहरूको वध गरिदिए।

इच्छन्नश्वस्य यच्छिरः पर्वतेष्वपश्रितम् । तद्विदच्छर्यणावति ॥१४॥

इन्द्रदेवले इच्छा गर्नासाथ अश्वको शिर पर्वतपछाडिका शर्यणावत् सरोवरमा भएको जाने। इन्द्रदेवले दधीचिका हड्डीले वज्र बनाएर उनान्सय असुर वध गरे।

अत्राह गोरमन्वत नाम त्वष्टुरपीच्यम् । इत्था चन्द्रमसो गृहे ॥१५॥

गतिमान् चन्द्रमण्डलमा त्वष्टाको दिव्य तेज छ भन्ने मनीषिहरूले अनुभव गरे।

को अद्य युङ्क्ते धुरि गा ऋतस्य शिमीवतो भामिनो दुर्हृणायून् ।
आसन्निषून्हृत्स्वसो मयोभून्य एषां भृत्यामृणधत्स जीवात् ॥१६॥

सामर्थ्यवान्, शत्रुहरूमाथि क्रोध गर्ने, हानेका बाणले लक्ष्यमा भेदन गर्ने इन्द्रदेवका रथको धुरा नै सत्ययज्ञमा छ। त्यसमा आज कसले अश्व योजित गर्न सक्ला ? जसले यी अश्वलाई पालनपोषण गर्दछ, उही जीवित रहन सक्ला।

क ईषते तुज्यते को बिभाय को मंसते सन्तमिन्द्रं को अन्ति ।
कस्तोकाय क इभायोत रायेऽधि ब्रवत्तन्वे३ को जनाय ॥१७॥

को भाग्दछ, को मारिन्छ, को डराउँछ, को सहायता गर्दछ, समीपमा रहेका इन्द्रदेवलाई कसले जान्दछ, को सन्तानका लागि, को पशुधन र ऐश्वर्यका लागि, को शारीरिक सुखका लागि र को आफन्त वा सम्बन्धीजनको हितका लागि इन्द्रदेवसित उत्तम वचनले स्तुति र बिन्ती गर्दछ ?

को अग्निमीट्टे हविषा घृतेन स्रुचा यजाता ऋतुभिर्ध्रुवेभिः ।
कस्मै देवा आ वहानाशु होम को मंसते वीतिहोत्रः सुदेवः ॥१८॥

को अग्निदेवको स्तुति गर्दछन् ? को सधैँ स्रुतिपात्रले घिउ र हविद्वारा यज्ञ गर्दछन् ? कसका लागि मागिएको धन देवगणले ल्याइदिन्छन् ? कसले यी दाता, उत्तम याजक श्रेष्ठ इन्द्रदेवलाई चिन्दछन् ?

त्वमङ्ग प्र शंसिषो देवः शविष्ठ मर्त्यम् ।
न त्वदन्यो मघवन्नस्ति मर्डितेन्द्र ब्रवीमि ते वचः ॥१९॥

हे प्रशंसनीय बलवान् इन्द्रदेव ! तिमी आफ्ना तेजले तेजस्वी भएर साधकको प्रशंसा गर्दछौ। हे ऐश्वर्यवान् इन्द्रदेव ! सुख प्रदान गर्ने तिमीबाहेक अन्य कोही पनि छैन। त्यसैले हामी सबैले तिम्रै स्तवन गरिरहेका छौँ।

मा ते राधांसि मा त ऊतयो वसोऽस्मान्कदा चना दभन् ।
विश्वा च न उपमिमीहि मानुष वसूनि चर्षणिभ्य आ ॥२०॥

हे विश्वका आश्रयदाता इन्द्रदेव ! तिमीले दिएको साधन हाम्रो विनाशका लागि नहोस्, रक्षाका लागि होस्। तिमीबाट प्रेरित शक्तिले विध्वंस नगरोस्। हे इन्द्रदेव ! तिमी मानव हितैषि छौ। हामी सज्जन नागरिकहरूलाई सबै खालका सम्पत्ति देऊ।

[सूक्त – ८५]

ऋषि – गोतम राहूगण। देवता – मरुद्गण। छन्द – जगती, ५, १२ त्रिष्टुप्।

प्र ये शुम्भन्ते जनयो न सप्तयो यामन्रुद्रस्य सूनवः सुदंससः ।
रोदसी हि मरुतश्चक्रिरे वृधे मदन्ति वीरा विदथेषु घृष्वयः ॥१॥

लोकहितका लागि तीव्रगतिले श्रेष्ठ कार्य गर्ने रुद्रदेवका पुत्र मरुत्गण रमणीहरूझैँ सुसज्जित भएर

बाहिर जान्छन्। यी मरुत्गण युद्धक्षेत्रमा शत्रुहरूसित सङ्घर्ष गरेर हर्षित हुन्छन्। उनीहरूले नै आकाश र पृथ्वी स्थापित गराए र यिनको उन्नति गरेका हुन्।

त उक्षितासो महिमानमाशत दिवि रुद्रासो अधि चक्रिरे सदः।
अर्चन्तो अर्कं जनयन्त इन्द्रियमधि श्रियो दधिरे पृश्निमातरः ॥२॥

रुद्रदेवका शोभायमान् र महिमावान् पुत्र मरुत्गणले आकाशमा आफ्नो स्थान बनाए। इन्द्रदेवका लागि यिनले स्तोत्र उच्चारण गरेर बल प्रकट गरे। पृथिवीपुत्र मरुत्गण अलङ्कार धारण गरेर शोभायमान भएका छन्।

गोमातरो यच्छुभयन्ते अञ्जिभिस्तनूषु शुभ्रा दधिरे विरुक्मतः।
बाधन्ते विश्वमभिमातिनमप वर्त्मान्येषमनु रीयते घृतम् ॥३॥

पृथिवीपुत्र मरुत्गण शरीरमा अलङ्कार लगाएर विशेष रूपले राम्रा हुन्छन्। तिनीहरू मार्गका शत्रुलाई छिन्नभिन्न पार्छन्। त्यसबाट घिउ उपलब्धिको मार्ग खुल्छ।

वि ये भ्राजन्ते सुमखास ऋष्टिभिः प्रच्यावयन्तो अच्युता चिदोजसा।
मनोजुवा यन्मरुतो रथेष्वा वृषव्रातासः पृषतीरयुग्ध्वम् ॥४॥

उत्तम युद्ध गर्ने वीर मरुत्गण दीप्तिमान् अस्त्रले सज्जित हुन्छन्। तिनले अडिग शत्रुलाई पनि आफ्ना सामर्थ्यले प्रकम्पित गराउँछन्। हे मरुत्गण ! तिमीहरू मनजस्तै वेगवान् रथमा थाटे मृगलाई जोतेर सङ्गठित हुँदै हिँड्ने गर्दछौ।

प्र यद्रथेषु पृषतीरयुग्ध्वं वाजे अद्रिं मरुतो रंहयन्तः।
उतारुषस्य वि ष्यन्ति धाराश्चर्मेवोदभिर्व्युन्दन्ति भूम ॥५॥

हे मरुत्गण ! जब तिमीहरू युद्धमा वज्रलाई प्रेरित गर्दै थाटे मृगलाई रथमा जोत्दछौ। त्यस बेला मट्याइला बादलका जलधाराहरू वेगका साथ ओरालोतिर प्रवाहित हुन्छन्। तिनीहरू भूमिलाई शरीरको छालाजस्तै ओसिलो बनाइदिन्छन्।

आ वो वहन्तु सप्तयो रघुष्यदो रघुपत्वानः प्र जिगात बाहुभिः।
सीदता बर्हिरुरु वः सदस्कृतं मादयध्वं मरुतो मध्वो अंधसः ॥६॥

हे मरुत्गण ! वेगवान् अश्वले तिमीहरूलाई यज्ञ स्थलमा लिएर आएका छन्। तिमीहरू शीघ्रतापूर्वक दुवै हातमा धन धारण गरेर यहाँ आऊ। तिमीहरूका निम्ति यहाँ ठूलो स्थान निर्मित छ। यहाँ कुशका आसनमा बसेर मधुर हविरूप अन्नको सेवन गरी हर्षित होओ।

तेऽवर्धन्त स्वतवसो महित्वना नाकं तस्थुरुरु चक्रिरे सदः।
विष्णुर्यद्धावद्वृषणं मदच्युतं वयो न सीदन्नधि बर्हिषि प्रिये ॥७॥

मरुत्गण आफ्ना सामर्थ्यले आफैं उन्नति गर्दछन्। उनीहरूले आफ्नो महत्त्वअनुसार स्वर्गमा ठूलो र विस्तृत स्थान तयार गरेका छन्। यस्ता इष्टवर्षक र हर्षप्रदायक मरुत्को रक्षा स्वयं परमात्मा विष्णुले गर्दछन्। हे मरुत्गण ! हाम्रो प्रिय यज्ञस्थलमा चराहरूझैँ पङ्क्तिबद्ध भएर आओ।

शूरा इवेद्युयुधयो न जग्मयः श्रवस्यवो न पृतनासु येतिरे।
भयन्ते विश्वा भुवना मरुद्भ्यो राजान इव त्वेषसंदृशो नरः ॥८॥

वीरझैँ सङ्घर्षशील, योद्धाझैँ आक्रामक, यशका इच्छुक, वीरझैँ अग्रणी, युद्धमा अति प्रयत्नशील यी मरुत्गण राजाझैँ विशेष तेजस्वी रूपमा शोभायमान छन्। यिनीहरूबाट सारा दुनियाँ नै डरले थर्कमान हुन्छ।

त्वष्टा यद्वज्रं सुकृतं हिरण्ययं सहस्रभृष्टिं स्वपा अवर्तयत्।
धत्त इन्द्रो नर्यपांसि कर्तवेऽहन्वृत्रं निरपामौब्जदर्णवम् ॥९॥

अत्यन्त कुशल कर्मी त्वष्टादेवले इन्द्रदेवका लागि स्वर्णमय सहस्र धारले युक्त वज्र बनाइदिए। इन्द्रदेवले त्यो वज्र लिएर मनुष्यको हितका लागि वीरोचित कार्य गरे। जलमा बाधा पार्ने वृत्रलाई मारेर जललाई मुक्त गराए।

ऊर्ध्वं नुनुद्रेऽवतं त ओजसा दादृहाणं चिद्बिभिदुर्वि पर्वतम्।
धमन्तो वाणं मरुतः सुदानवो मदे सोमस्य रण्यानि चक्रिरे ॥१०॥

मरुत्गणले आफ्ना बलले भूमिको जल माथितर्फ पठाए। विशेष रूपले बलियो मेघ भत्काए। त्यसपछि उत्तम दानी पुरुषजस्ता मरुत्गण सोमपानबाट हर्षित भए। अनि आफ्ना वाद्ययन्त्रले ध्वनि गराउँदै तिनले उत्तम गान पनि गाए।

जिह्मं नुनुद्रेऽवतं तया दिशासिञ्चन्नुत्सं गोतमाय तृष्णजे।
आ गच्छन्तीमवसा चित्रभानवः कामं विप्रस्य तर्पयन्त धामभिः ॥११॥

मरुत्गणले जलाशयका जल तेर्छो रूपमा बगाए। तिर्खाले आत्तिएका गोतम ऋषिका वंशजलाई झर्नाले सिंचाइ गरे। अद्भुत दीप्ति भएका मरुत्गण संरक्षण साधनले युक्त भएर ऋषिहरूको रक्षाका लागि गए र तिर्खा मेटाइदिए।

या व शर्म शशमानाय सन्ति त्रिधातूनि दाशुषे यच्छताधि।
अस्मभ्यं तानि मरुतो वि यन्त रयिं नो धत्त वृषणः सुवीरम् ॥१२॥

हे मरुत्गण ! स्तोता र दाताहरूलाई उनीहरूका कामनाभन्दा तीन गुना बढी फल दिएर तिमीहरू सुखी बनाउँछौ। त्यसरी नै हामीलाई पनि देओ। हे बलवान् वीरहरू हो ! तिमीहरू उत्तम सन्तानसहित हामीलाई धन प्रदान गर।

[सूक्त - ८६]

ऋषि - गोतम राहूगण। देवता - मरुद्गण। छन्द - गायत्री।

मरुतो यस्य हि क्षये पाथा दिवो विमहसः। स सुगोपातमो जनः ॥१॥

हे दिव्य लोकका बासिन्दा, विशिष्ट तेजस्विताले सम्पन्न मरुत्गण ! जुन यजमानका यज्ञमा तिमीहरूले सोमपान गर्‍यौ, चिरकालसम्म तिनीहरूलाई निश्चय नै तिमीहरूले संरक्षित गर्नेछौ।

यज्ञैर्वा यज्ञवाहसो विप्रस्य वा मतीनाम्। मरुतः शृणुता हवम् ॥२॥

हे यज्ञ निर्वाह गर्ने मरुत्गण ! हाम्रा यज्ञमा ऋषिहरूले रचेका स्तुति सुन।

उत वा यस्य वाजिनोऽनु विप्रमतक्षत। स गन्ता गोमति व्रजे ॥३॥

जुन यज्ञका यजमानलाई तिमीहरूले ऋषिजस्तै श्रेष्ठमार्गमा चल्ने बनायौ, त्यस्ता यजमान गाईको बथान पाउनयोग्य हुनेछन्।

अस्य वीरस्य बर्हिषि सुतः सोमो दिविष्टिषु। उक्थं मदश्च शस्यते ॥४॥

स्वर्गको सुख प्राप्त गर्न इच्छा गर्ने मानिसहरू मरुत्गणका लागि यज्ञमा कुशका आसनमाथि तयार पारिएको सोमरस राख्छन् र स्तोत्रको गाउँछन्। त्यसबाट मरुत्गण हर्षित हुँदै प्रशंसा प्राप्त गर्दछन्।

अस्य श्रोषन्त्वा भुवो विश्वा यश्चर्षणीरभि। सूरं चित्सस्रुषीरिषः ॥५॥

हे सर्वद्रष्टा शत्रुविजेता मरुत्गण ! तिमीहरू यजमानको निवेदन सुन। त्यसका साथै अन्न पनि प्राप्त गर।

पूर्वीभिर्हि ददाशिम शरद्भिर्मरुतो वयम्। अवोभिश्चर्षणीनाम् ॥६॥

हे मरुत्गण ! तिमीहरूका रक्षण सामर्थ्यले सम्पन्न भएर हामी अनेकौं वर्ष पहिलेदेखि हव्य आदि दान गर्दै आएका छौं।

सुभगः स प्रयज्यवो मरुतो अस्तु मर्त्यः। यस्य प्रयांसि पर्षथ ॥७॥

हे पूज्य मरुत्गण ! तिमीहरूले जसको हविष्यान्नको सेवन गर्दछौ, ती मानिसहरू सौभाग्यशाली हुन्छन्।

शशमानस्य वा नरः स्वेदस्य सत्यशवसः। विदा कामस्य वेनतः ॥८॥

हे सत्यका बलले सम्पन्न पराक्रमी मरुत्गण ! पसिनाले भिज्दै स्तुति गर्ने याजकलाई तिमीहरू अभीष्ट फल प्रदान गर।

यूयं तत्सत्यशवस आविष्कर्त महित्वना। विध्यता विद्युता रक्षः ॥९॥

हे सत्यको बलले युक्त मरुत्गण ! तिमीहरू आफ्ना तेजस्वी सामर्थ्यले राक्षसलाई मार्ने बल प्रकट गर।

गूहता गुह्यं तमो वि यात विश्वमत्रिणम्। ज्योतिष्कर्ता यदुश्मसि ॥१०॥

हे मरुत्गण ! बाक्लो अँध्यारो तिमीहरू हटाइदेओ। सबै राक्षसहरूलाई हामीदेखि टाढा भगाओ। तिमीहरूबाट हामी ज्योतिरूप ज्ञानको याचना गर्दछौं।

[सूक्त - ८७]

ऋषि - गोतम राहूगण। देवता - मरुद्गण। छन्द - जगती।

प्रत्वक्षसः प्रतवसो विरप्शिनोऽनानता अविथुरा ऋजीषिणः।
जुष्टतमासो नृतमासो अञ्जिभिर्व्यानज्रे के चिदुस्रा इव स्तृभिः ॥१॥

शत्रुसंहारक, महान् बलशाली, कुशल वक्ता, युद्धमा अडिग, अविच्छिन्न गतिमान, सरल व्यवहार हुने मानिसका अति प्रिय, मनुष्य समाजका शिरोमणि मरुत्गण देवी उषाजस्तै अलङ्कारले युक्त भएर विशेष प्रकाशित हुन्छन्।

उपह्वरेषु यदचिध्वं ययिं वय इव मरुतः केन चित्पथा।
श्चोतन्ति कोशा उप वो रथेष्वा घृतमुक्षता मधुवर्णमर्चते ॥२॥

हे मरुत्गण ! तिमीहरू चराभैँ जुनसुकै मार्गबाट आएर हाम्रा यज्ञमा एकत्र होओ। आफ्ना रथमा रहेको धनको कोष हामीमाथि बर्साओ र याजकलाई घिउजस्तै मिठो अन्न प्रदान गर।

प्रैषामज्मेषु विथुरेव रेजते भूमिर्यामेषु यद्ध युञ्जते शुभे।
ते क्रीडयो धुनयो भ्राजदृष्टयः स्वयं महित्वं पनयन्त धूतयः ॥३॥

यी मङ्गलकारी वीर मरुत्गण एकत्र भएर युद्धस्थमा आक्रमणको तयारीका साथ वेगले कुद्न लाग्दा पृथ्वी पनि अनाथ नारीजस्तै भएर काँप्न थाल्दछ। क्रीडायुक्त, गर्जनयुक्त, चमकदार अस्त्रहरूले युक्त भएर शत्रुहरूलाई विचलित गराउँदै यिनले आफ्नो महत्त्व प्रकट गर्दछन्।

स हि स्वसृत्पृषदश्वो युवा गणो३ या ईशानस्तविषीभिरावृतः।
असि सत्य ऋणयावानेद्योऽस्या धियः प्राविताथा वृषा गणः ॥४॥

स्वचालित मरुत्गण अश्व विन्दुदार हुनाले चिनिन्छन्। मरुत्हरू विविध बलले युक्त हुनाले सबैमाथि प्रभुत्व राख्न समर्थ छन्। यिनीहरू सत्यरूप, पापनाशक, अनिन्दनीय, बलशाली, बुद्धिलाई प्रेरित गर्ने र रक्षा गर्ने हुन्।

पितुः प्रत्नस्य जन्मना वदामसि सोमस्य जिह्वा प्र जिगाति चक्षुसा।
यदीमिन्द्रं शम्यृक्वाण आशतादिन्नामानि यज्ञियानि दधिरे ॥५॥

मरुत्हरूका जन्मको कथा हाम्रा पूर्वजहरूले भनेका छन्। सोमलाई देखेपछि हाम्रा वाणीले मरुत्गणको स्तुति गर्दछ। मरुत्गण सङ्ग्राममा इन्द्रदेवका सहायक भएका बेला याज्ञिकहरूले यिनीहरूलाई प्रशंसनीय यज्ञार्ह नामले विभूषित गर।

श्रियसे कं भानुभिः सं मिमिक्षिरे ते रश्मिभिस्त ऋक्वभिः सुखादयः।
ते वाशीमन्त इष्मिणो अभीरवो विद्रे प्रियस्य मारुतस्य धाम्नः ॥६॥

उत्तम अलङ्कार र अस्त्रहरूले सजिएका मरुत्गण ऋषिहरूको वाणीबाट राम्ररी सुशोभित हुने गर्दछन्। यिनीहरू स्तोताका लागि वर्षा गराउने इच्छा गर्दछन्। त्यसैले वेगले जाने यी निडर वीरहरू आफ्ना प्रिय स्थानमा पुग्दछन्।

[सूक्त - ८८]

ऋषि - गोतम राहूगण। देवता - मरुद्गण। छन्द - त्रिष्टुप् पंक्ति विराड्रूपा।

आ विद्युन्मद्भिर्मरुतः स्वर्कै रथेभिर्यात ऋष्टिमद्भिरश्वपर्णैः।
आ वर्षिष्ठया न इषा वयो न पप्तता सुमायाः ॥१॥

हे मरुत्गण ! तिमीहरू विद्युत्भैँ दीप्ति भएका र अतिशय गतिसम्पन्न छौ। अस्त्रले सज्जित भएर उड्ने अश्वहरू नारिएका रथमा यहाँ आओ। तिमीहरूको बुद्धि हितकारी छ। तिमीहरू श्रेष्ठ अन्न लिएर पक्षीभैँ वेगले हामीकहाँ आओ।

तेऽरुणेभिर्वरमा पिशङ्गैः शुभे कं यान्ति रथतूर्भिरश्वैः।
रुक्मो न चित्रः स्वधितीवान्पव्या रथस्य जङ्घनन्त भूम ॥२॥

अरुणिम आभा भएका, खैरो रङ्गका अश्व नारिएका स्वर्णमय रथमा चढेर कल्याणकारी कर्म सम्पादन गर्नका लागि तेज गतिमा मरुत्गण आउँछन्। अद्भुत आयुधले युक्त मरुत्हरू रथमा विराजमान भएका बेला रथका पाङ्ग्रामा भएका फलामे पाताले भुइँ कोतर्दै हिँड्छन्।

श्रिये कं वो अधि तनूषु वाशीर्मेधा वना न कृणवन्त ऊर्ध्वा।
युष्मभ्यं कं मरुतः सुजातास्तुविद्युम्नासो धनयन्ते अद्रिम् ॥३॥

हे मरुत्गण ! तिमीहरू आफ्नो शरीर आयुधले सजाउँछौ। वनका वृक्ष बढेझैँ आफ्नो बुद्धि उच्च बनाउँछौ। हे शुभ जन्म प्राप्त मरुत्गण ! अत्यन्त उत्साहित यजमानले तिमीहरूलाई खुसी गराउनका लागि सोम कुट्ने सिलौटाबाट ध्वनि उत्पन्न गराउँछन् र सोमरस तयार पार्दछन्।

अहानि गृध्राः पर्या व आगुरिमां धियं वार्कार्यां च देवीम्।
ब्रह्म कृण्वन्तो गोतमासो अर्कैरूर्ध्वं नुनुद्र उत्सधिं पिबध्यै ॥४॥

हे स्तोता हो ! जलको इच्छा गर्ने तिमीहरूका शुभ दिन अब आइपुगे। गोतमहरूले दिव्य बुद्धिले मन्त्रयुक्त स्तोत्रले स्तुति गरे, पिउनका लागि माथि रहेको मेघरूपी कुण्ड तिमीहरूतिर प्रेरित भएको छ।

एतत्त्यन्न योजनमचेति सस्वर्ह यन्मरुतो गोतमो वः।
पश्यन्हिरण्यचक्रानयोदंष्ट्रान्विधावतो वराहून् ॥५॥

हे मरुत्गण ! स्वर्णमय रथमा बसेर, तीक्ष्ण धार भएका आयुधले सम्पन्न हुँदै विविध किसिमले शत्रुमाथि आक्रमण गरेर तिनीहरूलाई नाश गर्दछौ। तिमीहरूलाई त्यस रूपमा देखेर गोतम ऋषिले छन्दयुक्त जुन स्तुतिहरू व्यक्त गरेका छन् तिनीहरूको वर्णन गर्न सम्भव भएन।

एषा स्या वो मरुतोऽनुभर्त्री प्रति ष्टोभति वाघतो न वाणी।
अस्तोभयद्वृथासामनु स्वधां गभस्त्योः ॥६॥

हे मरुत्गण ! तिमीहरूका बाहुबलको यशोगान गर्ने ऋषिको वाणी अनुकरण गरेर हामी स्तुति गर्दछौँ। यो स्तुति हामीभन्दा पहिलेदेखि यसै किसिमले सहज रूपमा गरिँदै छ।

[सूक्त - ८९]

ऋषि - गोतम राहूगण। देवता - विश्वेदेवा छन्द - जगती विराट् त्रिष्टुप।

आ नो भद्राः क्रतवो यन्तु विश्वतोऽदब्धासो अपरीतास उद्भिदः।
देवा नो यथा सदमिद्वृधे असन्नप्रायुवो रक्षितारो दिवेदिवे ॥१॥

कल्याणकारी, कसैका दबावमा नआउने, अपराजित, समुन्नतिकारक, शुभ कर्महरूलाई हामी सबैतिरबाट प्राप्त गरौँ। हामीलाई सधैँ सुरक्षा गर्ने देवगण हाम्रो उन्नति गराउँदै रक्षा गर्नका लागि तयार रहून्।

देवानां भद्रा सुमतिर्ऋजूयतां देवानां रातिरभि नो नि वर्तताम्।
देवानां सख्यमुप सेदिमा वयं देवा न आयुः प्र तिरन्तु जीवसे ॥२॥

सन्मार्गमा प्रेरित गर्ने दिने देवताहरूको कल्याणकारी सद्बुद्धि तथा उदार सहयोग हामीलाई प्राप्त भइरहोस्। देवताहरूसित मित्रता प्राप्त गरेर हामी उनीहरूकै निकटमा रहौँ। उनीहरूले हाम्रो जीवनलाई दीर्घायु गराइदिऊन्।

तान्पूर्वया निविदा हूमहे वयं भगं मित्रमदितिं दक्षमस्रिधम्।
अर्यमणं वरुणं सोममश्विना सरस्वती नः सुभगा मयस्करत् ॥३॥

हामी भग, मित्र, अदिति, दक्ष, मरुत्गण, अर्यमा, वरुण, सोम, अश्विनीकुमार र सौभाग्यशालिनी सरस्वती आदि देवगणलाई स्तुति गर्दछौँ। यिनीहरू हाम्रा लागि सुखदाता होऊन्।

तन्नो वातो मयोभु वातु भेषजं तन्माता पृथिवी तत्पिता द्यौः।
तद्ग्रावाणः सोमसुतो मयोभुवस्तदश्विना शृणुतं धिष्ण्या युवम् ॥४॥

वायुदेवले हामीलाई सुखप्रद औषधि प्रदान गरून्। माताजस्ती पृथिवी, पिताजस्ता आकाश र सोम पेल्ने पाषाणले हामीलाई औषधी दिऊन्। तीक्ष्ण बुद्धिले सम्पन्न हे अश्विनीकुमारहरू हो ! तिमीहरू हाम्रो प्रार्थना सुन।

तमीशानं जगतस्तस्थुषस्पतिं धियञ्जिन्वमवसे हूमहे वयम्।
पूषा नो यथा वेदसामसद्वृधे रक्षिता पायुरदब्धः स्वस्तये ॥५॥

स्थावरजङ्गम जगत्का पालक, बुद्धिलाई प्रेरित गर्ने विश्वदेवहरूलाई हामी आफ्नो सुरक्षाका लागि बोलाउँछौँ। अविचलित पूषादेव हाम्रो ऐश्वर्य वृद्धि र सुरक्षा गर्नमा सहायक होऊन्। उनीहरूले हाम्रो कल्याण गरून्।

स्वस्ति न इन्द्रो वृद्धश्रवाः स्वस्ति नः पूषा विश्ववेदाः।
स्वस्ति नस्तार्क्ष्यो अरिष्टनेमिः स्वस्ति नो बृहस्पतिर्दधातु ॥६॥

अति यशस्वी इन्द्रले हाम्रो कल्याण गरुन् होऊन्। सर्वज्ञाता पूषादेवले हाम्रो मङ्गल गरुन्। गतिलो बुद्धि भएका गरुड हाम्रा हितकारक होऊन्। ज्ञानका स्वामी बृहस्पतिले हाम्रो कल्याण गरुन्।

पृषदश्वा मरुतः पृश्निमातरः शुभंयावानो विदथेषु जग्मयः।
अग्निजिह्वा मनवः सूरचक्षसो विश्वे नो देवा अवसा गमन्निह ॥७॥

टाटेपाटे रङ्गका अश्व भएका, भूमिपुत्र, शुभकर्मा, युद्धमा जाने, अग्निका ज्वालाजस्तो तेजसम्पन्न, मननयोग्य ज्ञानसम्पन्न, मरुत्गण रक्षण सामर्थ्यले युक्त भएर आऊन्।

भद्रं कर्णेभिः शृणुयाम देवा भद्रं पश्येमाक्षभिर्यजत्राः।
स्थिरैरङ्गैस्तुष्टुवांसस्तनूभिर्व्यशेम देवहितं यदायुः ॥८॥

हे यजनयोग्य देवताहरू ! हाम्रा कानले मङ्गल सुनून्, आँखाले कल्याण देखून्। स्थिर र पुष्ट अङ्गले तिमीहरूको स्तुति गर्दै देवताबाट निश्चित गरिएको आयु प्राप्त गरौं र देवताकै हितका काममा तिनलाई उपयोग गरौं।

शतमिन्नु शरदो अन्ति देवा यत्रा नश्चक्रा जरसं तनूनाम्।
पुत्रासो यत्र पितरो भवन्ति मा नो मध्या रीरिषतायुर्गन्तोः ॥९॥

हे देवताहरू ! सय वर्षसम्म हाम्रो आयुको सीमा होस्। हाम्रा शरीरमा बुढ्यौली पनि तिमीले नै दिएका हौ। त्यस बेला हाम्रा छोराहरू पनि बाबु बनिसक्दछन्। त्यसो हुँदा हाम्रो आयु बीचमा नै क्षीण नहोओस् भन्ने प्रयत्न गरौं।

अदितिर्द्यौरदितिरन्तरिक्षमदितिर्माता स पिता स पुत्रः।
विश्वे देवा अदितिः पञ्च जना अदितिर्जातमदितिर्जनित्वम् ॥१०॥

अदिति नै द्युलोक हुन्। अन्तरिक्ष, माता, पिता, पुत्र, सम्पूर्ण देवगण, पञ्चजन, नयाँ उत्पन्न र पछि उत्पन्न हुने यी जेजति छन्, ती सबै नै अदितिकै रूप हुन्।

[सूक्त - ९०]

ऋषि - गोतम राहूगण। देवता - विश्वेदेवा। छन्द - गायत्री अनुष्टुप।

ऋजुनीती नो वरुणो मित्रो नयतु विद्वान्। अर्यमा देवैः सजोषाः ॥१॥

मित्र र वरुणजस्ता ज्ञानी देवताले हामीलाई सरल नीतिपथमा अघि बढाइरहून्। देवताहरूका सहचर अर्यमाले हामीलाई सरल मार्गबाट उन्नतिशील बनाऊन्।

ते हि वस्वो वसवानास्ते अप्रमूरा महोभिः। व्रता रक्षन्ते विश्वाहा ॥२॥

धन धारण गर्ने धनपति, प्रकृष्ट बुद्धि सम्पन्न, महान् सामर्थ्यले सम्पूर्ण शत्रु नाश गर्ने नियममा अटल छन्।

ते अस्मभ्यं शर्म यंसन्नमृता मर्त्येभ्यः। बाधमाना अप द्विषः ॥३॥

अविनाशी देवगणले हाम्रा शत्रु नाश गरेर मानिसलाई सबै किसिमका सुख दिन्छन्।

वि नः पथः सुविताय चियन्त्विन्द्रो मरुतः। पूषा भगो वन्द्यासः ॥४॥

इन्द्र, मरुत्, पूषा र भग आदि वन्दनीय देवताले हामीलाई हितकारी पथमा प्रेरित गरुन्।

उत नो धियो गोअग्राः पूषन्विष्णवेवयावः। कर्ता नः स्वस्तिमः ॥५॥

हे पूषा ! हे विष्णु ! हे गतिशील मरुत्गण ! तिमीहरू हाम्रो बुद्धि गाईजस्तै बनाओ। हाम्रो कल्याण गर।

मधु वाता ऋतायते मधु क्षरन्ति सिन्धवः। माध्वीर्नः सन्त्वोषधीः ॥६॥

यज्ञ कर्म गर्नेहरूका लागि वायु एवं नदीले मधुर प्रवाह उत्पन्न गराऊन्। सबै औषधी मधुर रसले सम्पन्न होऊन्।

मधु नक्तमुतोषसो मधुमत्पार्थिवं रजः। मधु द्यौरस्तु नः पिता ॥७॥

पिताझैं पोषणकर्ता दिव्यलोक हाम्रा निम्ति माधुर्ययुक्त होस्। माताजस्तै रक्षक पृथ्वीको धुलो मधुजस्तै आनन्दप्रद होस्। रात्रि र उषादेवी हाम्रा निम्ति माधुर्ययुक्त होऊन्।

**मधुमान्नो वनस्पतिर्मधुमाँ अस्तु सूर्यः। माध्वीर्गावो भवन्तु नः ॥८॥**

सम्पूर्ण वनस्पतिहरू हाम्रा लागि मधुर सुखप्रदायक होऊन्। सूर्यदेवले हामीलाई आफ्ना माधुर्यले परिपुष्ट गरुन् र गाईहरू हाम्रा लागि अमृतजस्तै मिठो दुधरूपी रस प्रदान गर्न सक्षम रहून्।

**शं नो मित्रः शं वरुणः शं नो भवत्वर्यमा।**
**शं न इन्द्रो बृहस्पतिः शं नो विष्णुरुरुक्रमः ॥९॥**

मित्रदेव, श्रेष्ठ वरुणदेव, न्यायकारी अर्यमादेव, ऐश्वर्यवान् इन्द्रदेव, वाणीका स्वामी बृहस्पतिदेव, संसारको पालन गर्ने विष्णुदेव हामी सबैका लागि हितकारी होऊन्।

[सूक्त - ९१]

ऋषि - गोतम राहूगण। देवता - सोम। छन्द - त्रिष्टुप् गायत्री उष्णिक्।

**त्वं सोम प्र चिकितो मनीषा त्वं रजिष्ठमनु नेषि पन्थाम्।**
**तव प्रणीती पितरो न इन्दो देवेषु रत्नभजन्त धीराः ॥१॥**

हे सोमदेव ! आफ्ना बुद्धिले हामी तिमीलाई जान्न सकौं। हामीलाई तिमी उत्तम मार्गमा हिंडाउँछौ। तिम्रा नेतृत्वमा तिम्रै अनुगमन गरेर हाम्रा पूर्वजहरू, देवताको भन्दा रमणीय सुख प्राप्त गर्नमा सफल भएका थिए।

**त्वं सोम क्रतुभिः सुक्रतुर्भूस्त्वं दक्षैः सुदक्षो विश्ववेदाः।**
**त्वं वृषा वृषत्वेभिर्महित्वाद्युम्नेभिर्द्युम्न्यभवो नृचक्षाः ॥२॥**

हे सोमदेव ! तिमी अनेक कर्म सम्पादन गर्ने भएकाले सुकर्माका रूपमा प्रसिद्ध छौ। सबैको कुरो जान्ने तिमी अनेक कर्ममा कुशल हुनाले उत्तम र दक्ष छौ। तिमी अनेक बलयुक्त हुनाले महाबली हौ। तिमी अनेकौं तेजस्वी धनले युक्त वैभवसम्पन्न छौ।

**राज्ञो नु ते वरुणस्य व्रतानि बृहद्गभीरं तव सोम धाम।**
**शुचिष्ट्वमसि प्रियो न मित्रो दक्षाय्यो अर्यमेवासि सोम ॥३॥**

हे सोमदेव ! तिमी अत्यन्त पवित्र छौ। तिम्रो धाम ज्यादै विस्तृत र भव्य छ। राजा वरुणका सबै नियमबाट तिमी मुक्त छौ। तिमी मित्रझैं प्रीतिकारक र अर्यमाझैं अति कुशल छौ।

**या ते धामानि दिवि या पृथिव्यां या पर्वतेष्वोषधीष्वप्सु।**
**तेभिर्नो विश्वैः सुमना अहेळन्राजन्त्सोम प्रति हव्या गृभाय ॥४॥**

हे राजा सोम ! आकाश, पृथ्वी माथिको पर्वत, औषधी र जल तिम्रो उत्तम स्थान हो। तिमी ती सबै स्थानहरूबाट द्वेषरहित प्रसन्न मनले यहाँ आएर हाम्रो हवि ग्रहण गर।

**त्वं सोमासि सत्पतिस्त्वं राजोत वृत्रहा। त्वं भद्रो असि क्रतुः ॥५॥**

हे सोमदेव ! तिमी श्रेष्ठ अधिपति हौ। तिमी सबैका नेतृत्वकर्ता र पोषक हौ। तिमी वृत्रनाशक र कल्याणकारी बलका प्रकट रूप नै हौ।

**त्वं च सोम नो वशो जीवातुं न मरामहे। प्रियस्तोत्रो वनस्पतिः ॥६॥**

हे सोमदेव ! तिमी हाम्रो दीर्घजीवनका लागि प्रशंसनीय ओषधीजस्तै हौ। तिम्रा कृपाले हामी मृत्युबाट जोगिन सक्छौं।

**त्वं सोम महे भगं त्वं यून ऋतायते। दक्षं दधासि जीवसे ॥७॥**

हे सोमदेव ! तिमी महान् यज्ञ सम्पादन गर्ने, तरुण हौ। उपासकलाई उत्तम जीवनका लागि बल र सौभाग्य प्रदान गर्दछौ।

**त्वं नः सोम विश्वतो रक्षा राजन्नघायतः। न रिष्येत्त्वावतः सखा ॥८॥**

हे राजा सोमदेव ! तिमी जसको रक्षा गर्दछौ, त्यो कहिल्यै पनि नष्ट हुँदैन। दुष्ट पापीहरूबाट सबै किसिमले तिमी हाम्रो रक्षा गर।

**सोम यास्ते मयोभुव ऊतयः सन्ति दाशुषे। ताभिर्नोऽविता भव ॥९॥**

हे सोमदेव ! हविदाताको सुखद जीवनका लागि रक्षण सामर्थ्यले उसको रक्षा गर।

**इमं यज्ञमिदं वचो जुजुषाण उपागहि। सोम त्वं नो वृधे भव ॥१०॥**

हे सोमदेव ! यस यज्ञमा हाम्रो स्तुति स्वीकार गर। हामीसँग आऊ र उन्नति गराऊ।

सोम गीर्भिष्ट्वा वयं वर्धयामो वचोविदः। सुमृडीको न आ विश ॥११॥
स्तुति वचनका ज्ञाता हे सोमदेव ! हामी आफ्ना वाणीले तिम्रो महत्त्व बढाउँछौं। तिमी हाम्रा बीचमा सुखसाधन लिएर प्रवेश गर।

गयस्फानो अमीवहा वसुवित्पुष्टिवर्धनः। सुमित्रः सोम नो भव ॥१२॥
हे सोमदेव ! तिमी हाम्रो उन्नति गराउने, रोग नाश गरिदिने, धन दिने, पुष्टिवर्धक र उत्तम मित्र बन।

सोम रारन्धि नो हृदि गावो न यवसेष्वा। मर्य इव स्व ओक्ये ॥१३॥
हे सोमदेव ! जौका खेतमा गाई र आफ्ना घरमा मानिस रमाएझैं तिमी हाम्रा हृदयमा रमण गर।

यः सोम सख्ये तव रारणद्देव मर्त्यः। तं दक्षः सचते कविः ॥१४॥
हे सोमदेव ! तिमीसँग मित्रतायुक्त रहने याजक नै मेधावी, कुशल र ज्ञानी हुन्छ।

उरुष्या णो अभिशस्तेः सोम नि पाह्यंहसः। सखा सुशेव एधि नः ॥१५॥
हे सोमदेव ! हामीलाई अपयशबाट जोगाऊ। पापबाट हामीलाई रक्षित गर र हाम्रा निमित्त सुखदायी मित्र बन।

आ प्यायस्व समेतु ते विश्वतः सोम वृष्ण्यम्। भवा वाजस्य सङ्गथे ॥१६॥
हे सोमदेव ! तिमी उन्नति गरेर सबैतिरका बलले युक्त होऊ। सङ्ग्राममा तिमी हाम्रा सहायक होऊ।

आ प्यायस्व मदिन्तम सोम विश्वेभिरंशुभिः।
भवा नः सुश्रवस्तमः सखा वृधे ॥१७॥
हे अति आह्लादक सोमदेव ! आफ्ना दिव्य गुणका यशगाथाहरू चारै दिशामा विस्तार गराऊ। हाम्रो उन्नतिका लागि मित्रका रूपमा तिमीले सहयोग गर।

सं ते पयांसि समु यन्तु वाजाः सं वृष्ण्यान्यभिमातिषाहः।
आप्यायमानो अमृताय सोम दिवि श्रवांस्युत्तमानि धिष्व ॥१८
हे शत्रुसंहारक सोमदेव ! दुध र अन्नबाट बल धारण गर। आफ्नो अमरत्व प्राप्तिका लागि द्युलोकमा श्रेष्ठ अन्नहरू प्राप्त गर।

या ते धामानि हविषा यजन्ति ता ते विश्वा परिभूरस्तु यज्ञम्।
गयस्फानः प्रतरणः सुवीरोऽवीरहा प्र चरा सोम दुर्यान ॥१९॥
हे सोमदेव ! यज्ञ गर्नेहरू तिम्रा जुन तेजका लागि हवि प्रदान गर्दछन्, ती सबै तेज प्रखर यज्ञक्षेका चारैतिर रहून्। घरको उन्नति गराउने, विपत्तिमा जोगाउने, पुत्रपौत्रादि श्रेष्ठ वीरहरूले युक्त गराउने, शत्रुका विनाशक सोमदेव ! तिमी हामीतिर आऊ।

सोमो धेनुं सोमो अर्वन्तमाशुं सोमो वीरं कर्मण्यं ददाति।
सादन्यं विदथ्यं सभेयं पितृश्रवणं यो ददाशदस्मै ॥२०॥
जसले हविरूपी द्रव्य दान गर्दछ, त्यसलाई सोमदेवले गाई र अश्व दिन्छन्। कर्मकुशल, गृहव्यवस्थामा कुशल, यज्ञका अधिकारी, सभामा प्रतिष्ठित पिताको यश बढाउने पुत्र पनि सोमदेवकै अनुग्रहबाट प्राप्त हुन्छन्।

अषाढहं युत्सु पृतनासु पप्रिं स्वर्षामप्सां वृजनस्य गोपाम्।
भरेषुजां सुक्षितिं सुश्रवसं जयन्तं त्वामनु मदेम सोम ॥२१॥
हे सोमदेव ! तिमी सङ्ग्राममा असहनीय देखिन्छौ र शत्रुहरूमाथि विजय प्राप्त गर्दछौ। विशाल सेनाका संरक्षक, जलदाता, सङ्ग्रामका विजेता, श्रेष्ठ निवासयुक्त र कीर्तिमान हुनाले तिम्रो अनुगमन हामी गर्नेछौं।

त्वमिमा ओषधीः सोम विश्वास्त्वमपो अजनयस्त्वं गाः।
त्वमा ततन्थोर्वन्तरिक्षं त्वं ज्योतिषा वि तमो ववर्थ ॥२॥
आफ्ना तेजले अन्धकार नाश गर्ने र अन्तरिक्षलाई विस्तृत गराउने हे दिव्य सोमदेव ! तिमीले नै पृथ्वीमा सबै औषधीहरू, गाईहरू र जल उत्पन्न गरायौ।

देवेन नो मनसा देव सोम रायो भागं सहसावन्नभि युध्य।
मा त्वा तनदीशिषे वीर्यस्योभयेभ्यः प्र चिकित्सा गविष्टौ ॥२३॥

हे दिव्य शक्तिसम्पन्न सोमदेव ! विचारपूर्वक श्रेष्ठ धनको भाग हामीलाई प्रदान गर। तिमी दानका लागि प्रवृत्त हुँदा तिमीलाई प्रतिबन्धित कसैले गर्नेछैन। किनभने तिमी नै अति समर्थ कार्यसाधक हौ। स्वर्गको कामना भएको हुनाले हामीलाई दुवै लोकमा तिमी सुख प्रदान गर।

[सूक्त - ९२]

ऋषि - गोतम राहूगण। देवता - उषा अश्विनी। छन्द - त्रिष्टुप् उष्णिक् जगती।

एता उ त्या उषसः केतुमक्रत पूर्वे अर्धे रजसो भानुमञ्जते।
निष्कृण्वाना आयुधानीव धृष्णवः प्रति गावोऽरुषीर्यन्ति मातरः ॥१॥

प्रत्येक दिन यी उषाले उज्यालो ल्याउछन्। आकाशको पूर्वार्द्धमा प्रकाश फैलिन्छ। वीरले शस्त्र चम्काएझैं आफ्ना प्रकाशले संसारलाई प्रकाशित गर्दै गमनशील र तेजस्वी रक्तवर्णी गाईहरू अगाडि आउँछन्।

उदपप्तन्नरुणा भानवो वृथा स्वायुजो अरुषीर्गा अयुक्षत।
अक्रन्नुषासो वयुनानि पूर्वथा रुशन्तं भानुमरुषीरशिश्रयुः ॥२॥

उषाकालमा अरुण किरणहरू स्वाभाविक रूपमा माथितिर आए। आफूखुसी गोरु नारिएका रथमा बसेर उषादेवीले पहिले ज्ञान सञ्चार गरिन्, त्यसपछि प्रकाशदाता तेजस्वी सूर्यदेवको सहायता गर्न लागिन्।

अर्चन्ति नारीरपसो न विष्टिभिः समानेन योजनेना परावतः।
इषं वहन्तीः सुकृते सुदानवे विश्वेदह यजमानाय सुन्वते ॥३॥

यजमानहरू यज्ञ आदि श्रेष्ठ कर्म र श्रेष्ठ प्रयोजनका लागि दान दिन्छन्। उनीहरू सोमरस छानेर तयार गर्दछन्। उषाले आफ्ना किरणले यजमानलाई मनग्गे अन्न दिँदै तेजले परिपूर्ण गर्दछिन्। युद्धमा हतियारले सजिएको वीरजस्तो उषाले आकाशलाई सुन्दर र दीप्तिमान् बनाउँछिन्।

अधि पेशांसि वपते नृतूरिवापोर्णुते वक्ष उस्रेव बर्जहम्।
ज्योतिर्विश्वस्मै भुवनाय कृण्वती गावो न व्रजं व्युषा आवर्तमः ॥४॥

उषादेवी नर्तकीजस्तो विविध रूप धारण गर्दै ओर्लन्छिन्। उषादेवी गाईले झैं पोषक प्रवाह प्रदान गर्नका लागि आफ्नो वक्ष खोलिदिन्छिन्। सम्पूर्ण लोकमा यिनी प्रकाश व्याप्त गर्दछिन् र अन्धकार मेटाउँदै सबैलाई रक्षा गर्दछिन्।

प्रत्यर्ची रुशदस्या अदर्शि वि तिष्ठते बाधते कृष्णमभ्वम्।
स्वरुं न पेशो विदथेष्वञ्जञ्चित्रं दिवो दुहिता भानुमश्रेत् ॥५॥

उषाका दीप्तिहरू उदाएर सर्वत्र फैलँदै छन् र बाक्लो अन्धकार हटाउँदै छन्। घिउले पखालेर यज्ञको यूप सुन्दर पारिएझैं यी आकाशपुत्री उषा विलक्षण प्रकाशयुक्त छिन्।

अतारिष्म तमसस्पारमस्योषा उच्छन्ती वयुना कृणोति।
श्रिये छन्दो न स्मयते विभाती सुप्रतीका सौमनसायाजीगः ॥६॥

हामी अन्धकारबाट पार भयौं। प्रकाशवती देवी उषाले सबै कुरा स्पष्ट गरेकी छन्। कविले छन्दलाई अलङ्कृत गरेजस्तै वा पतिलाई प्रसन्न गर्न गहनाले सजिएकी सुन्दर स्त्रीजस्तै दिव्य प्रकाशले अलङ्कृत भएर उषा हाँसेकी छन्।

भास्वती नेत्री सूनृतानां दिवः स्तवे दुहिता गोतमेभिः।
प्रजावतो नृवतो अश्वबुध्यानुषो गोअग्राँ उप मासि वाजान् ॥७॥

प्रकाशमती, सत्य वाणीलाई प्रेरित गर्ने, आकाशपुत्री उषा गोतम ऋषिद्वारा स्तुत्य छिन्। हे उषादेवी ! हामीलाई पुत्र, पौत्र, अश्व, गाई र विविध धनधान्यले सम्पन्न गराऊ।

उषस्तमश्यां यशसं सुवीरं दासप्रवर्गं रयिमश्वबुध्यम्।
सुदंससा श्रवसा या विभासि वाजप्रसूता सुभगे बृहन्तम् ॥८॥

हे सौभाग्यशालिनी उषादेवी ! हामीलाई सुन्दर पुत्र, सेवक, अश्वसहित यशस्वी धन प्राप्त गराऊ। तिमी उत्तम कर्म भएकी, यशस्विनी, अन्न उत्पन्न गर्ने हौ। आफ्ना ऐश्वर्यले हामीलाई प्रकाशित गराऊ।

विश्वानि देवी भुवनाभिचक्ष्या प्रतीची चक्षुरुर्विया विभाति।
विश्वं जीवं चरसे बोधयन्ती विश्वस्य वाचमविदन्मनायोः ॥९॥

उषादेवी दुनियाँ हेर्दै पश्चिमतिर फर्किएर विशिष्ट प्रकाशले प्रतिभासित हुन्छिन्। सबै जीव जगाएर गतिमान् बनाउँदै विश्वका मननशील मानवलाई वाणीको प्रेरणा दिन्छिन्।

पुनः पुनर्जायमाना पुराणी समानं वर्णमभि शुम्भमाना।
श्वघ्नीव कृत्नुर्विज आमिनाना मर्तस्य देवी जरयन्त्यायुः ॥१०॥

बारम्बार प्रकट हुने सनातन देवी उषा प्रत्येक दिन उस्तै रूपरङ्गमा सजिन्छिन्। व्याधाले पक्षीको सङ्ख्या घटाइदिएझैं उषादेवी मनुष्यको आयु क्षीण गराउँदै हिंड्छिन्।

व्यूर्ण्वती दिवो अन्ताँ अबोध्यप स्वसारं सनुतर्युयोति।
प्रमिनती मनुष्या युगानि योषा जारस्य चक्षसा वि भाति ॥११॥

उषादेवी आकाशको विस्तृत प्रदेश प्रकाशित गर्नका लागि जागेर उठेकी छिन्। यिनी मानवी युगलाई नष्ट गर्दै सूर्यदेवका दर्शनले विशेष प्रकाशित हुन्छिन्।

पशून्न चित्रा सुभगा प्रथाना सिन्धुर्न क्षोद उर्विया व्यश्वैत्।
अमिनती दैव्यानि व्रतानि सूर्यस्य चेति रश्मिभिर्दृशाना ॥१२॥

उज्यालो वर्णकी सौभाग्यशालिनी उषादेवी गोठबाट निस्केका पशुझैं छरिन्छिन्। नदीमा पानी बढेझैं फिंजिन्छिन्। कहिल्यै विचलित नहुने देवताका असल कर्मजस्ती उषादेवी सूर्यका रश्मिले आलोकित हुन्छिन्।

उषस्तच्चित्रमा भरास्मभ्यं वाजिनीवति। येन तोकं च तनयं च धामहे ॥१३॥

हवन प्रारम्भ गराउने हे उषादेवी! हामीलाई सन्तानको पोषण गर्न सक्ने गरी विलक्षण ऐश्वर्य प्रदान गर।

उषो अद्येह गोमत्यश्वावति विभावरि। रेवदस्मे व्युच्छ सूनृतावति ॥१४॥

गाई र अश्वले युक्त यज्ञकर्मकी प्रेरक हे उषादेवी! आज हामीलाई तिमी धनधान्यले परिपूर्ण गराऊ।

युक्ष्वा हि वाजिनीवत्यश्वाँ उषः। अथा नो विश्वा सौभगान्या वह ॥१५॥

हवन प्रारम्भ गराउने हे उषादेवी! अरुण वर्णका अश्व आफ्ना रथमा जोड र हामीलाई विश्वका सबै सौभाग्य प्रदान गर।

अश्विना वर्तिरस्मदा गोमद्दस्रा हिरण्यवत्।
अर्वाग्रथं समनसा नि यच्छतम् ॥१६॥

शत्रु नाश गर्ने हे अश्विनीकुमारहरू हो! मन लगाएर तिमीहरू गाई र स्वर्णमय रथ हाम्रा लागि पठाइदेओ।

यावित्था श्लोकमा दिवो ज्योतिर्जनाय चक्रथुः।
आ न ऊर्जं वहतमश्विना युवम् ॥१७॥

हे अश्विनीकुमारहरू हो! द्युलोकबाट प्रशंसायोग्य प्रकाश ल्याएर तिमीहरू दुनियाँको हित गर्दछौ। यस्तो काम गर्ने तिमीहरू हामीलाई अन्नले पुष्ट गर।

एह देवा मयोभुवा दस्रा हिरण्यवर्तनी। उषर्बुधो वहन्तु सोमपीतये ॥१८॥

स्वर्णिम प्रकाशयुक्त उषादेवीका साथ दुःख निवारक र सुखदायी अश्विनीकुमारलाई यस यज्ञमा सोमपानका लागि जाग्रत अश्वले ल्याइदिऊन्।।

[सूक्त - ९३]

**ऋषि** – गोतम राहूगण। **देवता** – अग्नी सोम। **छन्द** – अनुष्टुप् त्रिष्टुप् जगती।

अग्नीषोमाविमं सु मे शृणुतं वृषणा हवम्।
प्रति सूक्तानि हर्यतं भवतं दाशुषे मयः ॥१॥

हे शक्तिवान् अग्नि र सोमदेव! तिमीहरू हाम्रो आह्वान सुन र हाम्रा उत्तम वचनबाट हर्षित होओ। हविदाताका निम्ति तिमीहरू सुखकारी भइदेओ।

अग्नीषोमा यो अद्य वामिदं वचः सपर्यति।
तस्मै धत्तं सुवीर्यं गवां पोषं स्वश्व्यम् ॥२॥

हे अग्नि र सोमदेव ! हामी आज तिमीहरूका निम्ति उत्तम वचन अर्पित गर्दछौं। उत्तम पराक्रम धारण गरेर हाम्रा लागि उत्तम अश्व र गाईको उन्नति गरिदेओ।

अग्नीषोमा य आहुतिं यो वां दाशाद्धविष्कृतिम्।
स प्रजया सुवीर्यं विश्वमायुर्व्यश्नवत् ॥३॥

हे अग्नि र सोमदेव ! जसले तिमीहरूलाई आहुति दिँदै हवन सम्पन्न गर्दछ, उसलाई सन्तानको सुखका साथै उत्तम बल र पूर्ण आयुले सम्पन्न गराओ।

अग्नीषोमा चेति तद्वीर्यं वां यदमुष्णीतमवसं पणिं गाः।
अवातिरतं बृसयस्य शेषोऽविन्दतं ज्योतिरेकं बहुभ्यः ॥४॥

हे अग्नि र सोमदेव ! तिमीहरूको पराक्रम त्यस बेला थाहा भयो, जब तिमीहरूले पणि बाट गाईहरू खोस्यौ र बृसयका बाँकी रक्षकहरूलाई क्षतविक्षत गरायौ। असङ्ख्यको हितका लागि सूर्यको प्रकाश प्रकट गरायौ।

युवमेतानि दिवि रोचनान्यग्निश्च सोम सक्रतू अधत्तम्।
युवं सिन्धूँरभिशस्तेरवद्यादग्नीषोमावमुञ्चतं गृभीतान् ॥५॥

हे अग्नि र सोमदेव ! तिमीहरू दुवै समान कर्म गर्दछौ। तिमीहरूले आकाशमा देखिने नक्षत्रहरू स्थापित गऱ्यौ र हिंसक वृत्रले थुनेका प्रतिबन्धित नदीलाई मुक्त गरायौ।

आन्यं दिवो मातरिश्वा जभारामथ्नादन्यं परि श्येनो अद्रेः।
अग्नीषोमा ब्रह्मणा वावृधानोरुं यज्ञाय चक्रथुरु लोकम् ॥६॥

हे अग्नि सोमदेव ! तिमीहरूमध्ये अग्निदेवलाई मातरिश्वा वायुले द्युलोकबाट यहाँ ल्याए र अर्का सोमदेवलाई बाज पक्षीले पर्वतका शिखरबाट ल्याए। तिमीहरू स्तोत्रले आफ्नो उन्नति गर्दै व्यापक क्षेत्रमा यज्ञ विस्तार गराउँछौ।

अग्नीषोमा हविषः प्रस्थितस्य वीतं हर्यतं वृषणा जुषेथाम्।
सुशर्माणा स्ववसा हि भूतमथा धत्तं यजमानायश शं योः ॥७॥

हे बलवान् अग्नि र सोमदेव ! हाम्रो हवि ग्रहण गरेर खुसी होओ। हामीलाई उत्तम सुख दिने र हाम्रो रक्षा गर्ने तिमीहरू नै हौ। यस यजमानको कष्ट मेटाएर सुख देओ।

यो अग्नीषोमा हविषा सपर्याद्देवद्रीचा मनसा यो घृतेन।
तस्य व्रतं रक्षतं पातमंहसो विशे जनाय महि शर्म यच्छतम् ॥८॥

हे अग्नि र सोमदेव ! जुन साधक देवताहरूका लागि भक्तिपूर्वक मन लगाएर घिउको हवि समर्पित गर्दछन्, तिनको व्रत तिमीहरू रक्षा गर। उनलाई पापबाट जोगाओ र उनका आफन्तहरूलाई विपुल सुखले सम्पन्न गराओ।

अग्नीषोमा सवेदसा सहूती वनतं गिरः। सं देवत्रा बभूवथुः ॥९॥

हे अग्नि र सोमदेव ! तिमीहरू दुवै ऐश्वर्यसम्पन्न छौ। यज्ञस्थलमा सँगसँगै बोलाइन्छौ। तिमीहरू दुवै देवत्वयुक्त छौ। हामीले संयुक्त रूपमा गरेको स्तुति स्वीकार गर।

अग्नीषोमावनेन वां यो वां घृतेन दाशति। तस्मै दीदयतं बृहत् ॥१०॥

हे अग्नि सोमदेव ! जसले तिमीहरूलाई घिउसहितको हविष्यान्न दिन्छ, उसका लागि तिमीहरू सकेसम्म अन्न र ऐश्वर्य प्रदान गर।

अग्नीषोमाविमानि नो युवं हव्या जुजोषतम्। आ यातमुप नः सचा ॥११॥

हे अग्नि सोमदेव ! हाम्रो यो हवि स्वीकार गर। तिमीहरू दुवै सँगै हाम्रा नजिक आओ।

अग्नीषोमा पिपृतमर्वतो न आ प्यायन्तामुस्रिया हव्यसूदः।
अस्मे बलानि मघवत्सु धत्तं कृणुतं नो अध्वरं श्रुष्टिमन्तम् ॥१२॥

हे अग्नि सोमदेव ! तिमीहरू हाम्रा अश्वलाई बलिया बनाओ। दुध, घिउको हवि दिने हाम्रा गाईहरू बलिया बनाओ। हे धनवान् ! हामी याजकलाई विभिन्न खालका बल धारण गराओ। हाम्रा यज्ञको यश विस्तृत गराओ।

## [सूक्त - ९४]

ऋषि - कुत्स आङ्गिरस। देवता - अदिति सिन्धु द्यावापृथिवी। छन्द - जगती त्रिष्टुप्।

**इमं स्तोममर्हते जातवेदसे रथमिव सं महेमा मनीषया।**
**भद्रा हि नः प्रमतिरस्य संसद्यग्ने सख्ये मा रिषामा वयं तव ॥१॥**

पूजनीय र सर्वज्ञानसम्पन्न अग्निलाई यज्ञमा प्रकट गराउनका लागि रथझैं विचारपूर्वक स्तुति गरिएको छ। यस यज्ञाग्निका सम्पर्कले हाम्रो बुद्धि कल्याणकारी बन्दछ। हे अग्निदेव ! तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

**यस्मै त्वमायजसे स साधत्यनर्वा क्षेति दधते सुवीर्यम्।**
**स तूताव नैनमश्नोत्यंहतिरग्ने सख्ये मा रिषामा वयं तव ॥२॥**

हे अग्निदेव ! तिमी जुन साधकको सहायता गर्दछौ, ऊ शक्तिसम्पन्न हुन्छ र शत्रुका भयबाट भएर निवास गर्दछ। ऊ धन र बलले सम्पन्न हुँदै प्रत्येक क्षेत्रमा सफलता प्राप्त गर्दछ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

**शकेम त्वा समिधं साधया धियस्त्वे देवा हविरदन्त्याहुतम्।**
**त्वमादित्यॉं आ वह तान्ह्यु१ श्मस्यग्ने सख्ये मा रिषामा वयं तव ॥३॥**

हे अग्निदेव ! तिमीलाई मनग्गे समिधाले प्रज्वलित गरिसकेपछि हामी देवताहरूका लागि आहुति प्रदान गर्दछौं। हवि ग्रहण गर्नका लागि देवताहरूलाई बोलाऊ र हाम्रो यज्ञ उपयुक्त किसिले सम्पन्न गराऊ। यहाँ हामी उनीहरूको आगमनका लागि उत्सुक छौं। हे अग्निदेव ! तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

**भरामेध्मं कृणवामा हवींषि ते चितयन्तः पर्वणापर्वणा वयम्।**
**जीवातवे प्रतरं साधया धियोऽग्ने सख्ये मा रिषामा वयं तव ॥४॥**

हे अग्निदेव ! प्रत्येक शुभ अवसरमा हामी समिधा एकत्र गरेर तिमीलाई प्रज्वलित गर्दै आहुति प्रदान गर्दछौं। हाम्रो दीर्घायुको कामनाले गरिएको यज्ञ सफल गर। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

**विशां गोपा अस्य चरन्ति जन्तवो द्विपच्च यदुत चतुष्पदक्तुभिः।**
**चित्रः केत उषसो महाँ अस्यग्ने सख्ये मा रिषामा वयं तव ॥५॥**

अग्निदेवबाट उत्पन्न किरण समस्त प्राणीको रक्षा गर्दै विचरण गर्दछन्। दुईखुट्टे र चारखुट्टे अग्निदेवबाट सुरक्षित रहन्छन्। हे अग्निदेव ! विलक्षण तेज भएका तिमी उषादेवीझैं महान् छौ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

**त्वमध्वर्युरुत होतासि पूर्व्यः प्रशास्ता पोता जनुषा पुरोहितः।**
**विश्वा विद्वाँ आर्त्विज्या धीर पुष्यस्यग्ने सख्ये मा रिषमा वयं तव ॥६॥**

हे मेधावी अग्निदेव ! तिमी अध्वर्यु र चिर पुरातन होताका रूप हौ। तिमी प्रशासक, पोताका रूप पनि हौ प्रारम्भदेखिकै पुरोहित हौ। ऋत्विक् र विद्वान्हरूका सम्पूर्ण कर्मलाई तिमी पुष्ट गर्दछौ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

**यो विश्वतः सुप्रतीकः सदृङ्ङसि दूरे चित्सन्तळिदिवाति रोचसे।**
**रात्र्याश्चिदन्धो अति देव पश्यस्यग्ने सख्ये मा रिषामा वयं तव ॥७॥**

हे अग्निदेव ! तिमी अति उत्तम रूपवान् र सर्वत्र दर्शनीय छौ। टाढा हुँदा हुँदै पनि तिमी बिजुलीझैं अत्यन्त दीप्तिमान् छौ। हे अग्निदेव ! तिमी रात्रिको अन्धकार नष्ट गरेर प्रकाशित हुन्छौ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

**पूर्वो देवा भवतु सुन्वतो रथोऽस्माकं शंसो अभ्यस्तु दूढ्यः।**
**तदा जानीतोत पुष्यता वचोऽग्ने सख्ये मा रिषामा वयं तव ॥८॥**

हे देवताहरू ! सोमपान गर्नेहरूका रथ सधैं अगाडि रहून्। पाप बुद्धि भएका दुष्टलाई हाम्रा स्तोत्रले पराजित गरोस्। विन्ती स्वीकार गरेर हाम्रो वचन तिमीहरू पुष्ट गराओ। हे अग्निदेव ! तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

वधैर्दुः शंसाँ अप दूढ्यो जहि दूरे वा ये अन्ति वा के चिदत्रिण।
अथा यज्ञाय गृणते सुगं कृध्यग्ने सख्ये मा रिषामा वयं तव ॥९॥

हे अग्निदेव ! पाप बुद्धि भएका, टाढा अथवा नजिक रहेका दुष्ट र हिंसक शत्रुलाई शस्त्रले वध गर। त्यसपछि यज्ञका स्तोताको मार्ग सुगम गराइदेऊ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

यदुयुक्था अरुष रोहिता रथे वातजूता वृषभस्येव ते रवः।
आदिन्वसि वनिनो धूमकेतुनाग्ने सख्ये मा रिषामा वयं तव ॥१०॥

हे अग्निदेव ! तेजस्वी, रोहित वर्णका, वायुभैँ वेगवान् अश्व नियोजित गरेका हुनाले तिम्रा रथले गम्भीर ध्वनि उत्पन्न हुन्छ। वनका सबै वृक्षमा तिमी धुवाँको पताका ओढाउँछौ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

अध स्वनादुत बिभ्युः पतत्रिणो द्रप्सा यत्ते यवसादो व्यस्थिरन्।
सुगं तत्ते तावकेभ्यो रथेभ्योऽग्ने सख्ये मा रिषामा वयं तव ॥११॥

हे अग्निदेव ! ज्वालाहरू जङ्गलमा फैलेका बेला तिम्रा शब्दले पक्षीहरू तर्सन्छन्। ज्वालाले तिनको मुख जलाउँदै फैलेका बेला तिम्रो अधीनस्थ रथ पनि सुगमतापूर्वक गमन गर्दछ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

अयं मित्रस्य वरुणस्य धायसेऽवयातां मरुतां हेडो अद्भुतः।
मृडा सु नो भूत्वेषां मनः पुनरग्ने सख्ये मा रिषामा वयं तव ॥१२॥

मित्र र वरुणदेवलाई अग्निदेवले धारण गर्न सक्छन्। ओर्लदै गरेका मरुतहरूको क्रोध भयङ्कर हुन्छ। हे अग्निदेव ! मरुतहरूको मन हाम्रा लागि प्रसन्नतायुक्त होस्। हामीलाई सुखी गराऊ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

देवो देवानामसि मित्रो अद्भुतो वसुर्वसूनामसि चारुरध्वरे।
शर्मन्त्स्याम तव सप्रथस्तमेऽग्ने सख्ये मा रिषामा वयं तव ॥१३॥

हे दिव्य अग्निदेव ! तिमी सबै देवताहरूका मित्ररूप हौ। यज्ञमा अति सुशोभित र सम्पूर्ण धनका परमधाम हौ। तिम्रो व्यापक गृहमा शरण लिएर हामी संरक्षित होऔँ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

तत्ते भद्रं यत्समिद्धः स्वे दमे सोमाहुतो जरसे मृडयत्तमः।
दधासि रत्नं द्रविणं च दाशुषेऽग्ने सख्ये मा रिषामा वयं तव ॥१४॥

हे अग्निदेव ! तिमी आफ्ना स्थानमा प्रज्वलित भएर सोमयुक्त आहुति ग्रहण गर्दछौ र स्तोतालाई अत्यन्त सुख प्रदान गर्दछौ। हविदातालाई रत्न आदि धन दिने तिम्रो कार्य अत्यन्त प्रशंसनीय छ। तिम्रो मित्रता पाऔँ र हामीलाई कहिल्यै कष्ट नहोस्।

यस्मै त्वं सुद्रविणो ददाशोऽनागास्त्वमदिते सर्वताता।
यं भद्रेण शवसा चोदयासि प्रजावता राधसा ते स्याम ॥१५॥

हे सुन्दर ऐश्वर्यवान, अनन्त बलवान् अग्निदेव ! यज्ञमा तिमी जुन याजकलाई पापबाट मुक्त गर्दछौ र जसलाई कल्याण, बल, वैभवका साथ सन्तान प्रदान गर्दछौ, तिनीहरूमा हामी पनि समावेश होऔँ।

स त्वमग्ने सौभगत्वस्य विद्वानस्माकमायुः प्र तिरेह देव।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥१६॥

हे दिव्य अग्निदेव ! तिमी सर्वसौभाग्यका ज्ञाता हौ हाम्रो आयु वृद्धि गर। मित्र, वरुण, अदिति, पृथ्वी, समुद्र र आकाशदेवले पनि हाम्रो आयु रक्षा गरुन्।

### [सूक्त - ९५]

ऋषि - कुत्स आङ्गिरस। देवता - अग्नि अथवा औपस-अग्नि। छन्द - त्रिष्टुप।

द्वे विरूपे चरतः स्वर्थे अन्यान्या वत्सुमुप धापयेते।
हरिरन्यस्यां भवति स्वधावाञ्छुक्रो अन्यस्यां ददृशे सुवर्चाः ॥१॥

विभिन्न स्वरूप भएका, उत्तम प्रयोजनमा लागेका दुई स्त्री एकले अर्काको पुत्र पोषण गर्दछन्। एउटीको पुत्र हरि रूपी सूर्य हो, त्यो दिनले पोषित छ, त्यो रात्रिका गर्भबाट जन्मन्छ र अर्काको पुत्र

शुक्र नाम भएको दिउँसो जगाइएको अग्नि हो, त्यसलाई रात्रिले पाल्दछ। यसरी एकापसमा अर्काको पुत्र पोषण गर्दछौं।

**दशेमं त्वष्टुर्जनयन्त गर्भमतन्द्रासो युवतयो विभृत्रम्।**
**तिग्मानीकं स्वयशसं जनेषु विरोचमानं परि षीं नयन्ति ॥२॥**

आलस्यरहित युवती तेजरूप अग्निदेवलाई गर्भबाट उत्पन्न गर्दछन्। पालन गर्ने, तीक्ष्ण मुख भएका, आफ्ना यशले जनताका माझमा प्रकाशित अग्निदेवलाई मानिसले चारैतिर लगेका छन्।

**त्रीणि जाना परि भूषन्त्यस्य समुद्र एकं दिव्येकमप्सु।**
**पूर्वामनु प्र दिशं पार्थिवानामृतून्प्रशासद्वि दधावनुष्ठु ॥३॥**

अग्निदेव बडवानल, सूर्य र अग्नि गरी तीन वटा विशिष्ट रूपले सर्वत्र विभूषित छन्। समुद्र, आकाश र अन्तरिक्षमा अग्निले ऋतुचक्रको व्यवस्था गरेका छन्। पृथ्वीका प्राणीको व्यवस्था गर्नका लागि पूर्व आदि दिशाहरूको स्थापना उनैले गरेका हुन्।

**क इमं वो निण्यमा चिकेत वत्सो मातॄर्जनयत स्वधाभिः।**
**बह्वीनां गर्भो अपसामुपस्थान्महान्कविर्निश्चरति स्वधावान् ॥४॥**

यस्ता रहस्यमय अग्निदेवलाई कसले चिनेको छ ? पुत्र भए पनि यिनले माताहरूलाई आफ्ना धारक सामर्थ्यले प्रकट गरेका छन्। आफ्ना धारक समर्थ्यले जलका गर्भमा रहेर समुद्रमा सञ्चार गर्ने यी अग्निदेव कविजस्तै स्रष्टा हुन्।

**आविष्ट्यो वर्धते चारुरासु जिह्मानामूर्ध्वः स्वयशा उपस्थे।**
**उभे त्वष्टुर्बिभ्यतुर्जायमानात्प्रतीची सिंहं प्रति जोषयेते ॥५॥**

जलभित्र रहेका अग्निदेव यज्ञसँग प्रकाशित भएर बढ्दै माथि आउँछन्। यिनी उत्पन्न भएपछि त्वष्टादेवका काठका रूपमा रहेका दुवै पुत्रीहरू भयभीत हुन थाल्दछन् र सिंहरूपी यी अग्निदेवका पछि लागेर सेवा गर्न लाग्दछन्।

**उभे भद्रे जोषयेते न मेने गावो न वाश्रा उप तस्थुरेवैः।**
**स दक्षाणां दक्षपतिर्बभूवाञ्जन्ति यं दक्षिणतो हविर्भिः ॥६॥**

आकाश र पृथ्वी दुवै कल्याणकारिणी सुन्दर स्त्रीहरूझैं छन्। तिनले सूर्यरूप अग्निदेवको सेवा गर्दछन्। गाई कराएझैं आफ्ना चालले यिनका नजिक आउँछन्। ऋत्विक्गण दक्षिणतिर फर्किएर हवि दिँदै अग्निदेवका लागि यजन गर्दछन्। अग्निदेव बलवान्भन्दा पनि झन् बलवान् छन्।

**उद्यंयमीति सवितेव बाहू उभे सिचौ यतते भीम ऋञ्जन्।**
**उच्छुक्रमत्कमजते सिमस्मान्नवा मातृभ्यो वसना जहाति ॥७॥**

सवितादेवजस्तै अग्निदेवले आफ्ना भुजारूपी रश्मिलाई फिँजाउँछन् र विकराल भएर सेचन गराउने द्यावा र पृथ्वीरूपी दुवै माताहरूलाई अलङ्कृत गर्दछन्। त्यसपछि प्रकाशको कवच हटाएर माताहरूलाई नयाँ वस्त्र पहिराइदिन्छन्।

**त्वेषं रूपं कृणुत उत्तरं यत्संपृञ्चानः सदने गोभिरद्भिः।**
**कविर्बुध्नं परि मर्मृज्यते धीः सा देवताता समितिर्बभूव ॥८॥**

मेधावी र ज्ञानसम्पन्न अग्निदेव आफ्ना स्थानमा दुध र घिउ भएका गाईले सम्पन्न हुँदै उत्तरोत्तर तेजस्वी रूप धारण गर्दछन्। यिनी मूल स्थानलाई अति शुद्ध गराउँछन् र टाढाको अन्तरिक्षसम्म दिव्य तेज फैलाउँछन्।

**उरु ते ज्रयः पर्येति बुध्नं विरोचमानं महिषस्य धाम।**
**विश्वेभिरग्ने स्वयशोभिरिद्धोऽदब्धेभिः पायुभिः पाह्यस्मान् ॥९॥**

महाबली अग्निदेवको उज्यालो तेज अन्तरिक्षका व्यापक स्थानमा फिँजिएको छ। हे अग्निदेव ! प्रदीप्त भएर सम्पूर्ण यशस्वी सामर्थ्य र अटल रक्षणसाधनले रक्षा गर।

**धन्वन्स्रोतः कृणुते गातुमूर्मिं शुक्रैरूर्मिभिरभि नक्षति क्षाम्।**
**विश्वा सनानि जठरेषु धत्तेऽन्तर्नवासु चरति प्रसूषु ॥१०॥**

अग्निदेव निर्जन स्थानमा पानीका मूल फुटाएर मार्ग बनाउँछन्। वर्षा गरेर पृथ्वीलाई जलले पूर्ण गराइदिन्छन्। प्राणीका पेटमा सबै अन्न स्थापित गराइदिन्छन्। यिनी नौलो वनस्पति र औषधीका गर्भमा शक्तिको सञ्चार गराउँछन्।

एवा नो अग्ने समिधा वृधानो रेवत्पावक श्रवसे वि भाहि।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥११॥

हे पवित्रकर्ता अग्निदेव ! समिधामा हुर्कने भएकाले हाम्रा लागि धन प्रदान गर्दछौं र आफ्ना यशले प्रकाशित छौं। मित्र, वरुण, अदिति, सिन्धु, पृथिवी र द्युलोकले पनि हाम्रो निवेदन समर्थन गरुन्।

[सूक्त - ९६]

ऋषि – कुत्स आङ्गिरस। देवता – अग्नि। छन्द – त्रिष्टुप।

स प्रत्नथा सहसा जायमानः सद्यः काव्यानि बळधत्त विश्वा।
आपश्च मित्रं धिषणा च साधन्देवा अग्निं धारयन्द्रविणोदाम् ॥१॥

बलपूर्वक उत्पन्न भएका अग्निदेवले पहिलेझैँ स्तुति स्वीकार गरे। अग्निदेवले जलको समूह र पृथ्वीलाई आफ्ना मित्र बनाए। देवताहरूले धन प्रदाता अग्निदेवलाई दूतका रूपमा धारण गरे।

स पूर्वया निविदा कव्यतायोरिमाः प्रजा अजनयन्मनूनाम्।
विवस्वता चक्षसा द्यामपश्च देवा अग्निं धारयन्द्रविणोदाम् ॥२॥

मन लगाएर गरिएका प्राचीन स्तुतिकाव्यबाट सन्तुष्ट भएपछि अग्निदेवले मनुका सन्तान उत्पन्न गराए। आफ्ना तेजस्वी प्रकाशले सूर्यका र विद्युत्‌का रूपमा अन्तरिक्षमा जल व्याप्त गराए। देवताहरूले धन प्रदाता अग्निदेवलाई दूतका रूपमा स्वीकार गरे।

तमीळत प्रथमं यज्ञसाधं विश आरीराहुतमृञ्जसानम्।
ऊर्जः पुत्रं भरतं सृप्रदानुं देवा अग्निं धारयन्द्रविणोदाम् ॥३॥

हे बुद्धिमान् प्रजाहरू हो ! देवयज्ञका साधक, आहुतिप्रिय, इच्छित फलप्रदायक, बलले उत्पन्न, भरणपोषणकर्ता, उत्तम दानशील अग्निदेवलाई पहिले स्तुति गर। देवताहरूले धन प्रदाता अग्निदेवलाई दूतका रूपमा स्वीकार गरे।

स मातरिश्वा पुरुवारपुष्टिर्विदद्गातुं तनयाय स्वर्वित्।
विशां गोपा जनिता रोदस्योर्देवा अग्निं धारयन्द्रविणोदाम् ॥४॥

मातरिश्वा अग्निदेव विविध प्रकारले पुष्टि प्रदायक, आत्मप्रकाशका ज्ञाता, प्रजारक्षक, पृथ्वी र आकाशका उत्पादक हुन्। उनले आफ्ना सन्तानको प्रगतिका उत्तम मार्गहरू खोजेर निकाले। देताहरूले धन प्रदता अग्निदेवलाई दूतका रुमपा स्वीकार गरे।

नक्तोषासा वर्णमामेम्याने धापयेते शिशुमेकं समीची।
द्यावाक्षामा रुक्मो अन्तर्वि भाति देवा अग्निं धारयन्द्रविणोदाम् ॥५॥

रात्रि र उषा एकअर्काको अस्तित्व विनाश गर्ने स्त्रीहरू हुन्। उनीहरू एकै ठाउँमा रहेर एउटै शिशुलाई पालनपोषण गर्दछन्। यी प्रकाशक अग्निदेव आकाश र पृथ्वीका बीचमा विशेष रूपले प्रतिभासित हुन्छन्। देताहरूले धन प्रदता अग्निदेवलाई दूतका रुमपा स्वीकार गरे।

रायो बुध्नः संगमनो वसूनां यज्ञस्य केतुर्मन्मसाधनो वेः।
अमृतत्वं रक्षमाणास एनं देवा अग्निं धारयन्द्रविणोदाम् ॥६॥

धनवैभवका मूल आधार स्वरूप अग्निदेव ऐश्वर्यले युक्त गराउँछन्। उनी यज्ञका सूचक ध्वाजाजस्ता छन् र मनुष्यका निमित्त इष्ट फल दिन्छन्। अमरत्वरक्षक देवताहरूले यस्ता अग्निदेवलाई धारण गरेका छन्।

नू च पुरा च सदनं रयीणां जातस्य च जायमानस्य च क्षाम्।
सतश्च गोपां भवतश्च भूरेर्देवा अग्निं धारयन्द्रविणोदाम् ॥७॥

अग्निदेव वर्तमान र प्राचीन सम्पदाका आधार हुन्। उत्पन्न भएका वा उत्पन्न हुनुपर्ने प्राणीका आश्रयस्थान अग्निदेव नै हुन्। जो विद्यमान छन् र उत्पन्न हुनेछन् ती सबै पदार्थका संरक्षक हुन्। देवताहरूले यस्ता धन प्रदाता अग्निदेवलाई धारण गरे।

द्रविणोदा द्रविणसस्तुरस्य द्रविणोदाः सनरस्य प्र यंसत्।
द्रविणोदा वीरवतीमिषं नो द्रविणोदा रासते दीर्घमायुः ॥८॥

धनप्रदाता अग्निदेवले हाम्रा उपयोगका निम्ति स्थावर र जङ्गम ऐश्वर्य साधन दिउन्। उनले हामीलाई सन्तानसहित धनसम्पदा र दीर्घ आयु पनि प्रदान गरुन्।

एवा नो अग्ने समिधा वृधानो रेवत्पावक श्रवसे वि भाहि।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥९॥

हे पवित्रकर्मा अग्निदेव ! समिधाले हुर्किएर हामीलाई धन दिँदै आफ्नो यश प्रकाशित गराऊ। हाम्रो निवेदन मित्र, वरुण, अदिति, समुद्र, पृथिवी र द्युलोकले समर्थन गरुन्।

[सूक्त - ९७]

ऋषि - कुत्स आङ्गिरस। देवता - अग्नि। छन्द - गायत्री।

अप नः शोशुचदघमग्ने शुशुग्ध्या रयिम्। अप नः शोशुचदघम् ॥१॥

हे अग्निदेव ! हाम्रो पाप भस्म गराऊ। हाम्रा चारैतिर ऐश्वर्य प्रकाशित गराऊ। हाम्रो पाप नाश गर।

सुक्षेत्रिया सुगातुया वसूया च यजामहे। अप नः शोशुचदघम् ॥२॥

हे अग्निदेव ! असल खेत, असल मार्ग र असल धनका इच्छाले हामी तिम्रो यजन गर्दछौं। तिमी हाम्रो पाप नाश गर।

प्र यद्भन्दिष्ठ एषां प्रास्माकासश्च सूरयः। अप नः शोशुचदघम् ॥३॥

हे अग्निदेव ! हामी सबै साधकहरू वीरता र बुद्धिपूर्वक विशिष्ट प्रकारले तिम्रो भक्ति गर्दछौं। तिमी हाम्रो पाप नाश गर।

प्र यत्ते अग्ने सूरयो जायेमहि प्र ते वयम्। अप नः शोशुचदघम ॥४॥

हे अग्निदेव ! यी विद्वान्हरू र हामी सबै तिम्रो उपासनाले तिमीजस्तै प्रकाशवान् भएका छौं, त्यसैले तिमी हाम्रो पाप नाश गर।

प्र यदग्नेः सहस्वतो विश्वतो यन्ति भानवः। अप नः शोशुचदघम ॥५॥

बलसम्पन्न अग्निदेवका देदीप्यमान किरणहरू सर्वत्र फिँजिँदै छन्। अग्निदेवले हाम्रो पाप नाश गरुन्।

त्वं हि विश्वतोमुख विश्वतः परिभूरसि। अप नः शोशुचदघम ॥६॥

हे सर्वतोमुखी अग्निदेव ! तिमी निश्चय नै सर्वत्र व्याप्त हुछौ। हाम्रो पाप नाश गर।

द्विषो नो विश्वतोमुखाति नावेव पारय। अप नः शोशुचदघम ॥७॥

हे सर्वतोमुखी अग्निदेव ! नौकाले नदी तारेझैं सबै शत्रुबाट हामीलाई पार लगाऊ। तिमी हाम्रो पाप नाश गर।

स नः सिन्धुमिव नावयाति पर्षा स्वस्तये। अप नः शोशुचदघम ॥८॥

हे सर्वतोमुखी अग्निदेव ! नौकाले नदी पार लगाएझैं सबै हिंसक शत्रुदेखि हामीलाई पार लगाऊ। तिमी हाम्रो पाप नाश गर।

[सूक्त - ९८]

ऋषि - कुत्स आङ्गिरस। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

वैश्वानरस्य सुमतौ स्याम राजा हि कं भुवनानामभिश्रीः।
इतो जातो विश्वमिदं वि चष्टे वैश्वानरो यतते सूर्येण ॥१॥

हामी वैश्वानर अग्निदेवलाई बढी प्रसन्न गर्न सकौं। सम्पूर्ण संसारका पोषक र सबैका द्रष्टा हुनाले उनी राजाझैं सामर्थ्यवान् र सूर्यझैं प्रयत्नशील छन्।

पृष्टो दिवि पृष्टो अग्निः पृथिव्यां पृष्टो विश्वा ओषधीरा विवेश।
वैश्वानरः सहसा पृष्टो अग्निः स नो दिवा स रिषः पातु नक्तम् ॥२॥

वैश्वानर अग्निदेव द्युलोक र पृथ्वीमा प्रशंसनीय छन्। सम्पूर्ण औषधीमा व्याप्त हुनाले यिनी प्रशंसाका पात्र हुन्। बलका कारण प्रशंसनीय अग्निदेवले दिनरातका हिंसक प्राणीबाट हामीलाई रक्षा गरुन्।

वैश्वानर तव तत्सत्यमस्त्वस्मान्रायो मघवानः सचन्ताम्।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥३॥

हे ऐश्वर्यवान् वैश्वानर अग्निदेव ! तिम्रो कार्य सत्य होस्। हामीलाई धनयुक्त ऐश्वर्यले परिपूर्ण गर। हाम्रो निवेदन मित्र, वरुण, अदिति, सिन्धु, पृथिवी र द्यौ आदि देवताले अनुमोदन गरुन्।

[सूक्त - ९९]

ऋषि - काश्यप मारीच। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**जातवेदसे सुनवाम सोममरातीयतो नि दहाति वेदः।**
**स नः पर्षदति दुर्गाणि विश्वा नावेव सिन्धुं दुरितात्यग्निः ॥१॥**

हामी सर्वज्ञ अग्निदेवका लागि सोम तयार गरौं। अग्निदेवले हाम्रा शत्रुहरूको सबै धन भस्म गराऊन्। नौकाबाट नदी पार गरेझैं अग्निदेवले हामीलाई सबै दुःखबाट पारि तारुन् र रक्षा गरुन्।

[सूक्त - १००]

ऋषि - वार्षागिर ऋज्राश्वाम्बरीष सहदेव सुराधस। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**स यो वृषा वृष्ण्येभिः समोका महो दिवः पृथिव्याश्च सम्राट्।**
**सतीनसत्वा हव्यो भरेषु मरुत्वान्नो भवत्विन्द्र ऊती ॥१॥**

इन्द्रदेव बलशाली, बलवर्धक र साधनहरूले युक्त छन्। उनी विशाल आकाश र पृथ्वीका स्वामी हुन्। उनी जल व्याप्त गराउँछन र सङ्ग्राममा आह्वानयोग्य छन्। मरुत्हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

**यस्यानाप्तः सूर्यस्येव यामो भरेभरे वृत्रहा शुष्मो अस्ति।**
**वृषन्तमः सखिभिः स्वेभिरेवैर्मरुत्वान्नो भवत्विन्द्र ऊती ॥२॥**

सूर्यको जस्तै दुर्लभ गति भएका वृत्रनाशक इन्द्रदेव प्रत्येक सङ्ग्राममा शत्रुलाई कम्पित गराउँछन्। मित्ररूप, आक्रामक र मरुत्हरूलाई साथमा लिएका इन्द्रदेव अत्यन्त बलशाली छन्। मरुत्हरूसँग आउने तिनै इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

**दिवो न यस्य रेतसो दुघानाः पन्थासो यन्ति शवसापरीताः।**
**तरद्द्वेषाः सासहिः पौंस्येभिर्मरुत्वान्नो भवत्विन्द्र ऊती ॥३॥**

सूर्यको किरणले झैं इन्द्रदेवका निर्विघ्न मार्गले अन्तरिक्षको जल दोहन गर्दछ। द्वेष गर्नेहरूलाई आफ्ना पराक्रमद्वारा यिनले नाश गर्दछन्। यिनले शत्रुलाई पराजित गर्दछन् र बलपूर्वक अगाडि बढ्दछन्। मरुत्हरूसँग आउने तिनै इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

**सो अङ्गिरोभिरङ्गिरस्तमो भूद्वृषा वृषभिः सखिभिः सखा सन्।**
**ऋग्मिभिर्ऋग्मी गातुभिर्ज्येष्ठो मरुत्वान्नो भवत्विन्द्र ऊती ॥४॥**

अङ्गिरा आदि ऋषिहरूबाट इन्द्रदेव अतिशय पूज्य छन्। उनी मित्रहरूमा श्रेष्ठ मित्र, बलवान्हरूमा अत्यन्त बलवान, ज्ञानीहरूमा अति ज्ञानसम्पन्न र साम आदि गान गाउने काममा वरिष्ठ छन्। मरुत्हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

**स सूनुभिर्न रुद्रेभिर्ऋभ्वा नृषाह्ये सासह्वाँ अमित्रान्।**
**सनीळेभिः श्रवस्यानि तूर्वन्मरुत्वान्नो भवत्विन्द्र ऊती ॥५॥**

महान् इन्द्रदेवले पुत्रसरिका प्रिय सहायक मरुत्हरूसँग मिलेर शत्रुलाई पराजित गरे। साथमा रहेका मरुत्गणसँग मिलेर उनले अन्नको वृद्धिका लागि जललाई ओरालोतिर बगाए। मरुत्हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

**स मन्युमीः समदनस्य कर्तास्माकेभिर्नृभिः सूर्यं सनत्।**
**अस्मिन्नहन्त्सत्पतिः पुरुहूतो मरुत्वान्नो भवत्विन्द्र ऊती ॥६॥**

शत्रुसित रिस देखाउने, खुसी भएर युद्धमा खट्ने र सत्प्रवृत्तिका पालक इन्द्रदेव धेरै तिरबाट आह्वान गरिन्छन्। उनले हाम्रा वीरहरूलाई साथमा लिएर वृत्रको नाश गरुन् र सूर्यदेवलाई प्रकट गरुन्। मरुत्हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

**तमूतयो रणयञ्छूरसातौ तं क्षेमस्य क्षितयः कृण्वत त्राम्।**
**स विश्वस्य करुणस्येश एको मरुत्वान्नो भवत्विन्द्र ऊती ॥७॥**

सहायक मरुत्हरूले इन्द्रदेवलाई युद्धमा उत्तेजित गराए। प्रजाहरूले आफ्नो रक्षाका निम्ति वीर मरुत्गणलाई रक्षक बनाए। इन्द्रदेव एक्लै सम्पूर्ण श्रेष्ठ कर्मका नेता हुन्। मरुत्हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

तमप्सन्त शवस उत्सवेषु नरो नरमवसे तं धनाय।
सो अन्धे चित्तमसि ज्योतिर्विदन्मरुत्वान्नो भवत्विन्द्र ऊती ॥८॥

विशाल युद्धमा बलशाली वीरहरूले इन्द्रदेवलाई धन र रक्षाका निमित्त बोलाउँछन्। उनै इन्द्रदेवले गहन अन्धकारबाट प्रकाश प्राप्त गरे। मरुत्‌हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

स सव्येन यमति व्राधतश्चित्स दक्षिणे संगृभीता कृतानि।
स कीरिणा चित्सनिता धनानि मरुत्वान्नो भवत्विन्द्र ऊती ॥९॥

इन्द्रदेव बायाँ हातले हिंसक शत्रुलाई रोक्दछन् र दाहिने हातले याजकहरूको हवि ग्रहण गर्दछन्। इन्द्रदेव स्तुतिले प्रसन्न भएपछि याजकहरूलाई धन दिन्छन्। मरुत्‌हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

स ग्रामेभिः सनिता स रथेभिर्विदे विश्वाभिः कृष्टिभिर्न्वद्य।
स पौंस्येभिरभिभूरशस्तीर्मरुत्वान्नो भवत्विन्द्र ऊती ॥१०॥

इन्द्रदेव मरुत्‌हरूको सहयोगले रथद्वारा धन प्रदान गर्दछन् भन्ने कुरा सारा प्रजाहरूले जानेका छन्। इन्द्रदेव आफ्ना सामर्थ्यले निन्दनीय शत्रुलाई पराजित गर्छन्। मरुत्‌हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

स जामिभिर्यत्समजाति मीळ्हेऽजामिभिर्वा पुरुहूत एवैः।
अपां तोकस्य तनयस्य जेषे मरुत्वान्नो भवत्विन्द्र ऊती ॥११॥

धेरै तिरबाट बोलाइने इन्द्रदेव आफ्ना युद्धमा जाँदाखेरि योद्धाहरूका छोरानाति विजयका लागि प्रयत्नशील हुन्छन्। मरुत्‌हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

स वज्रभृद्दस्युहा भीम उग्रः सहस्रचेताः शतनीथ ऋभ्वा।
चम्रीषो न शवसा पाञ्चजन्यो मरुत्वान्नो भवत्विन्द्र ऊती ॥१२॥

वज्रधारी, दुष्टनाशक, विकराल, पराक्रमी, सहस्र ज्ञानका धाराहरूले युक्त, सयौं किसिमका नीतिले युक्त, प्रकाशवान्, सोमभैँ पूज्य इन्द्रदेवको सामर्थ्य पाँचै वर्गका मानिसका लागि हितकारी छ। मरुत्‌हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

तस्य वज्रः क्रन्दति स्वत्स्वर्षा दिवो न त्वेषो रवथः शिमीवान्।
तं सचन्ते सनयस्तं धनानि मरुत्वान्नो भवत्विन्द्र ऊती ॥१३॥

अत्यन्त तीव्र गर्जना गर्ने इन्द्रदेवको वज्र द्युलोकका सूर्यदेवको जस्तै तेजले सम्पन्न छ। स्तुति गरेपछि इन्द्रदेवे उनीहरूलाई सुख र धन आदि दिएर सन्तुष्ट गराउँछन्। मरुत्‌हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

यस्याजस्रं शवसा मानमुक्थं परिभुजद्रोदसी विश्वतः सीम्।
स पारिषत्क्रतुभिर्मन्दसानो मरुत्वान्नो भवत्विन्द्र ऊती ॥१४॥

इन्द्रदेवको प्रशंसनीय बलले आकाश र पृथ्वी दुवै लोकलाई सबै तिरबाट निरन्तर पोषण गरिरहेको छ। यज्ञ आदि कर्मबाट उनी हर्षित होऊन् र हाम्रो दुःख हटाऊन्। मरुत्‌हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

न यस्य देवा देवता न मर्ता आपश्चन शवसो अन्तमापुः।
स प्ररिक्वा त्वक्षसा क्ष्मो दिवश्च मरुत्वान्नो भवत्विन्द्र ऊती ॥१५॥

इन्द्रदेवसँग बल कति छ भनेर प्रवृत्ति भएका देव, दानी मनुष्य र जलले थाहा पाउन सक्दैनन्। उनै इन्द्रदेव आफ्ना तेजस्वी सामर्थ्यले पृथ्वी र द्युलोकभन्दा महान् छन्। मरुत्‌हरूसँग आउने त्यस्ता इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

रोहिच्छ्यावा सुमदंशुर्ललामीर्द्युक्षा राय ऋज्राश्वस्य।
वृषण्वन्तं बिभ्रती धूर्षु रथं मन्द्रा चिकेत नाहुषीषु विक्षु ॥१६॥

रोहित र श्याम वर्णका अश्वहरू उत्तम तेजस्वी आभूषणहरूले सुशोभित इन्द्रदेवका रथमा नारिएर प्रसन्नतापूर्वक गर्जना गर्दै दगुर्दछन्। इन्द्रदेवले ऋज्राश्वलाई ऐश्वर्य प्रदान गर्दछन्। मानवी प्रजा पनि धनका निमित्त निवेदन गर्दै देखिन्छन्।

**एतत्यत्त इन्द्र वृष्ण उक्थं वार्षागिरा अभि गृणन्ति राधः।**
**ऋज्राश्वः प्रष्टिभिरम्बरीषः सहदेवो भयमानः सुराधाः ॥१७॥**

हे इन्द्रदेव ! ऋज्राश्व अम्बरीष, सहदेव, भयमान् र सुराधस् आदि वृषागिरका पुत्रहरू ऋषिहरूका नजिकै बसेर तिमीजस्ता शक्तिशालीलाई प्रसिद्ध स्तोत्र गाउँछन्।

**दस्यूञ्छिम्यूंश्च पुरुहूत एवैर्हत्वा पृथिव्यां शर्वा नि बर्हीत्।**
**सनत्क्षेत्रं सखिभिः श्वित्न्येभिः सनत्सूर्यं सनदपः सुवज्रः ॥१८॥**

धेरै तिरबाट बोलाइने इन्द्रदेवले आफ्ना सहायक मरुत्गणसित मिलेर पृथ्वीमा भएका दुष्ट र हिंसक शत्रुलाई तीक्ष्ण वज्रले प्रहार गरेर निर्मूल गराए। त्यसपछि तिनै उत्तम वज्रधारी श्वेत वस्त्र र अलङ्कारले विभूषित इन्द्रले मरुत्गणका सहयोगले भूमि जिते। उनले जलसमूह प्राप्त गरे र सूर्य पनि प्राप्त गरे।

**विश्वाहेन्द्रो अधिवक्ता नो अस्त्वपरिह्वृताः सनुयाम वाजम्।**
**तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥१९॥**

इन्द्रदेव प्रत्येक दिन हाम्रा लागि प्रेरक उपदेशक होऊन्। कपट त्यागेर हामी उनलाई अन्न आदि अर्पित गरौं। मित्र, वरुण, अदिति, सिन्धु, पृथ्वी र द्यौ हाम्रो यो निवेदन अनुमोदन गरुन्।

[सूक्त - १०१]

**ऋषि** - कुत्स आङ्गिरस। **देवता** - इन्द्र। **छन्द** - जगती त्रिष्टुप्।

**प्र मन्दिने पितुमदर्चता वचो यः कृष्णगर्भा निरहन्नृजिश्वना।**
**अवस्यवो वृषणं वज्रदक्षिणं मरुत्वन्तं सख्याय हवामहे ॥१॥**

हे ऋत्विक्गण ! महान् इन्द्रदेवलाई हविष्यान्न दिएर अर्चना गर। ऋजिश्वका सहायताले गर्भिणी स्त्रीहरूसँग कृष्णासुरको वध गर्ने, दाहिने हातमा वज्र धारण गर्ने मरुत्गणको सेनासँग रहने, शक्तिसम्पन्न इन्द्रदेवलाई आफ्नो संरक्षणको कामना गर्ने हामी यजमान मित्रभावले आह्वान गर्दछौं।

**यो व्यंसं जाहृषाणेन मन्युना यः शम्बरं यो अहन्पिप्रुमव्रतम्।**
**इन्द्रो यः शुष्णमशुषं न्यावृणङ्मरुत्वन्तं सख्याय हवामहे ॥२॥**

इन्द्रदेवले सर्वप्रथम वृत्रासुरको गर्धन काटे। त्यसपछि धर्मका नियमविरोधी पिप्रुको वध गरे र प्रजाको शोषण गर्ने शम्बर एवं शुष्ण नामका दुवै दैत्यको वध गरे। यस किसिमले दैत्य नाश गर्ने उनै इन्द्रदेव हुन्। मित्रताका लागि मरुत्का सहयोगी यस्ता इन्द्रदेवलाई हामी आह्वान गर्दछौं।

**यस्य द्यावापृथिवी पौंस्यं महद्यस्य व्रते वरुणो यस्य सूर्यः।**
**यस्येन्द्रस्य सिन्धवः सश्चति व्रतं मरुत्वन्तं सख्याय हवामहे ॥३॥**

इन्द्रदेवका सामर्थ्यशक्तिले स्वर्गलोक, भूलोक, वरुण, सूर्य र सरिताहरू आआफ्ना व्रत नियममा आबद्ध छन्। मरुत्हरूको सहयोग लिने उनै इन्द्रदेवलाई बलियो मैत्रीभावका निमित्त हामी आह्वान गर्दछौं।

**यो अश्वानां यो गवां गोपतिर्वशी य आरितः कर्मणिकर्मणि स्थिरः।**
**वीळोश्चिदिन्द्रो यो असुन्वतो वधो मरुत्वन्तं सख्याय हवामहे ॥४॥**

इन्द्रदेव गाई एवं अश्वका रक्षक, प्रत्येक कार्यमा स्थिर भएर प्रशंसित र विधिपूर्वक सोमयुक्त यज्ञीय कर्मविमुख शत्रुहरूका नाशक हुन्। मरुत्हरूका साथै उनै इन्द्रदेवलाई हामी मित्रताका लागि आह्वान गर्दछौं।

**यो विश्वस्य जगतः प्राणतस्पतिर्यो ब्रह्मणे प्रथमो गा अविन्दत्।**
**इन्द्रो यो दस्यूँरधराँ अवातिरन्मरुत्वन्तं सख्याय हवामहे ॥५॥**

विश्वका अधिपति, सम्पूर्ण गतिमान् प्राणीहरूका स्वामी, ब्रह्मज्ञानको खोजीमा लागेका ज्ञानीहरूलाई सर्वश्रेष्ठ गाई उपलब्ध गराउने, नीच दुष्टका संहारक इन्द्रदेवलाई मरुत्गणका साथमा मैत्री स्थिर रहोस् भनेर हामी आह्वान गर्दछौं।

**यः शूरेभिर्हव्यो यश्च भीरुभिर्यो धावद्भिर्हूयते यश्च जिग्युभिः।**
**इन्द्रं य विश्वा भुवनाभि संदधुर्मरुत्वन्तं सख्याय हवामहे ॥६॥**

इन्द्रदेवलाई शूरवीर र भीरु दुवै खालका मानिसहरूले सहयोग पाउनका लागि बोलाउँछन्। उनलाई सङ्ग्राम विजयी र पलायनकर्ता दुवै किसिमकाले बोलाउँछन्। जसका पराक्रम शक्तिमा सारा संसार नै अडिएको छ त्यस्ता इन्द्रदेवलाई मरुत्हरूका साथ हामी मित्रताका लागि आह्वान गर्दछौं।

रुद्राणामेति प्रदिशा विचक्षणो रुद्रेभिर्योषा तनुते पृथु ज्रयः।
इन्द्रं मनीषा अभ्यर्चति श्रुतं मरुत्वन्तं सख्याय हवामहे ॥७॥

विवेकसम्पन्न, रुद्रपुत्र मरुत्हरूका दिशाको अनुसरण गर्ने, मरुत्हरू र उषादेवीका सामञ्जस्यले आफ्नो तेज अझ विस्तृत एवं प्रसिद्ध गराउने प्रख्यात इन्द्रदेवलाई मानिसहरू अर्चना गर्दछन्। इन्द्रदेवको स्तुति मानिसहरूका ज्ञानसम्पन्न वाणीले गर्दछ। त्यस्ता इन्द्रदेवलाई मरुत्हरूका साथ हामी मित्रता वृद्धिका लागि आह्वान गर्दछौँ।

यद्वा मरुत्वः परमे सधस्थे उद्वावमे वृजने मादयासे।
अत आ याह्यध्वरं नो अच्छा त्वाया अविश्चकृमा सत्यराधः ॥८॥

हे मरुत्हरूका साथमा रहने युक्त इन्द्रदेव ! तिमी सर्वश्रेष्ठ दिव्यलोक वा झन्डिएर रहेको अन्तरिक्ष लोक जहाँसुकै आनन्दयुक्त हुन्छौ। हाम्रा यस यज्ञस्थलमा जतिसक्दो चाँडो आइदेऊ। हे श्रेष्ठ ऐश्वर्यशाली इन्द्रदेव ! तिम्रा कृपाको आशा गर्ने हामी तिम्रा निमित्त आहुति प्रदान गर्दछौँ।

त्वायेन्द्र सोमं सुषुमा सुदक्ष त्वाया हविश्चकृमा ब्रह्मवाहः।
अधा नियुत्वः सगणो मरुद्भिरस्मिन्यज्ञे बर्हिषि मादयस्व ॥९॥

हे कार्यकुशल इन्द्रदेव ! हामी तिम्रै निमित्त सोमरस तयार गर्दछौँ। हे स्तोत्रबाट प्राप्त गर्न सकिने इन्द्रदेव ! हामी तिम्रै लागि हवि प्रदान गर्दछौँ। हे अश्वले सम्पन्न इन्द्रदेव ! मरुत्गणका साथै यस यज्ञमा आएर विराजमान भइदेऊ र सोमपानले आनन्द होऊ।

मादयस्व हरिभिर्ये त इन्द्र वि ष्यस्व शिप्रे वि सृजस्व धेने।
आ त्वा सुशिप्र हरयो वहन्तूशन्हव्यानि प्रति नो जुषस्व ॥१०॥

हे इन्द्रदेव ! अश्वका साथै प्रसन्नता प्राप्त गर, मुखबाट सुखद ध्वनि गर। हे असल मुकुट धारण गर्ने इन्द्रदेव ! रथ तान्ने घोडाले तिमीलाई हामीसमक्ष ल्याइदिऊन्। हे आशा पूरा गराउने इन्द्रदेव ! तिमी हाम्रो आहुति आदरका साथ ग्रहण गर।

मरुत्स्तोत्रस्य वृजनस्य गोपा वयमिन्द्रेण सनुयाम वाजम्।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥११॥

मरुत्गणका स्तुतिले प्रशंसित, शत्रुसंहारक इन्द्रदेवबाट हामी संरक्षित छौँ। हामीलाई उनैका सहायताबाट अन्न प्राप्त होस्। त्यसैले मित्र, वरुण, अदिति, सिन्धु, पृथ्वी र दिव्यलोक सबैले हामीलाई सहयोग प्रदान गरुन्।

[सूक्त - १०२]

ऋषि - कुत्स आङ्गिरस। देवता - इन्द्र। छन्द - जगती त्रिष्टुप्।

इमां ते धियं प्र भरे महो महीमस्य स्तोत्रे धिषणा यत्त आनजे।
तमुत्सवे च प्रसवे च सासहिमिन्द्रं देवासः शवसामदन्नु ॥१॥

हे महान् यशस्वी इन्द्रदेव ! तिमी शत्रुहरूलाई पराजित गरेर उन्नति गर्दछौ। हामी उत्तम स्तोत्रले तिम्रो स्तुति गर्दछौँ। उत्साहित देवताहरू आफ्नो धन वृद्धि र रक्षा प्राप्त गर्नका लागि तिमीलाई प्रसन्न गराउँछन्।

अस्य श्रवो नद्यः सप्त बिभ्रति द्यावाक्षामा पृथिवी दर्शतं वपुः।
अस्मे सूर्याचन्द्रमसाभिचक्षे श्रद्धे कमिन्द्र चरतो वितर्तुरम् ॥२॥

इन्द्रदेवका कामको कीर्तिलाइ सातै नदीहरूले धारण गरेका छन् र उनको सुन्दर रूप पृथ्वी, अन्तरिक्ष र स्वर्गलोकले धारण गर्दछन्। हे इन्द्रदेव ! तिम्रा तेजले प्रकाशित सूर्य र चन्द्रमा प्राणीलाई श्रद्धायुक्त ज्ञान एवं आलोक प्रदान गर्दछन् र आफ्नै नियममा घुमिरहन्छन्।

तं स्मा रथं मघवन्प्राव सातये जैत्रं यं ते अनुमदाम संगमे।
आजा न इन्द्र मनसा पुरुष्टुत त्वायद्भ्यो मघवञ्छर्म यच्छ नः ॥३॥

हे वैभवशाली इन्द्रदेव ! तिमी हाम्रा विभिन्न प्रकारका प्रार्थनाहरूले प्रसन्न होऊ। तिम्रो विजयी रथ सेनाले युक्त भएर आइलागेका सङ्ग्राममा देखेपछि हामी आनन्दित हुन्छौँ। उसै रथलाई हाम्रो विजयका लागि तिमी प्रेरित गर। हे ऐश्वर्यशाली इन्द्रदेव ! हामीलाई सुख प्रदान गर।

वयं जयेम त्वया युजा वृतमस्माकमंशमुदवा भरेभरे।
अस्मभ्यमिन्द्र वरिवः सुगं कृधि प्र शत्रूणां मघवन्वृष्ण्या रुज ॥४॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! तिम्रा सहयोगले नजिकका शत्रुमाथि हामी विजय गरौं। तिमी प्रत्येक सङ्ग्राममा हाम्रा पक्षको सुरक्षा गर। शत्रुको सामर्थ्य क्षीण गराऊ र प्राप्त गरेको धन निर्विघ्न रूपले हामी उपभोग गर्न सकौं।

नाना हि त्वा हवमाना जना इमे धनानां धर्तरवसा विपन्यवः।
अस्माकं स्मा रथमा तिष्ठ सातये जैत्रं हीन्द्र निभृतं मनस्तव ॥५॥

हे धनको रक्षा गर्ने इन्द्रदेव ! तिम्रो आह्वान र स्तुति गर्ने अनेकौं मानिसहरू छन्। त्यसैले सम्पत्ति प्रदान गर्नका लागि तिमी केवल हाम्रै रथमा आएर विराजमान होऊ। तिम्रो स्थिर मन हामीलाई विजयी बनाउन पूर्ण सक्षम होस्।

गोजिता बाहू अमितक्रतुः सिमः कर्मन्कर्मञ्छतमूतिः खजङ्करः।
अकल्प इन्द्रः प्रतिमानमोजसाथा जना वि ह्वयन्ते सिषासवः ॥६॥

इन्द्रदेवका बलशाली भुजाहरू गाई जित्नका लागि सक्षम छन्। पराक्रमी इन्द्रदेव प्रत्येक कर्मका लागि संरक्षण साधनले सम्पन्न छन्। इन्द्रदेव अनन्त शक्तियुक्त, सङ्घर्षशील, अतुलनीय पराक्रमका प्रतिमूर्ति हुन्। त्यसैले धनको कामना गर्नेहरू उनलाई नै आह्वान गर्दछन्।

उत्ते शतान्मघवन्नुच्च भूयस उत्सहस्राद्रिरिचे कृष्टिषु श्रवः।
अमात्रं त्वा धिषणा तित्विषे मह्यधा वृत्राणि जिघ्नसे पुरन्दर ॥७॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! तिम्रो कीर्ति मनुष्यको भन्दा सयौं वा हज्जारौं गुणा बढी छ। मानिसहरूको विशाल प्रार्थनाले अनन्त शक्तिसम्पन्न इन्द्रदेवको महिमा प्रकट गर्दछ। हे कठोर किल्लाहरू भत्काउन इन्द्रदेव ! तिमी वृत्रलाई हनन गर्न सक्षम छौ।

त्रिविष्टिधातु प्रतिमानमोजसस्तिस्रो भूमीर्नृपते त्रीणि रोचना।
अतीदं विश्वं भुवनं ववक्षिथाशत्रुरिन्द्र जनुषा सनादसि ॥८॥

हे मनुष्यका संरक्षक इन्द्रदेव ! तिमी तीन लोकमा सूर्य, अग्नि र विद्युत् गरी तीनै रूपमा स्थित छौ। आफ्ना शक्तिसामर्थ्यले तीन भूमि, तीन तेज र यो सबै लोकलाई सञ्चालित गरिरहेका छौ। तिमी उत्पत्ति कालदेखि नै शत्रुरहित छौ।

त्वां देवेषु प्रथमं हवामहे त्वं बभूथ पृतनासु सासहिः।
सेमं नः कारुमुपमन्युमुद्भिदमिन्द्रः कृणोतु प्रसवे रथं पुरः ॥९॥

हे देवताहरूमा सर्वश्रेष्ठ, नेताका रूपमा रहेका इन्द्रदेव ! तिमीलाई हामी आह्वान गर्छौं। तिमी युद्धमा शुत्रहरूलाई पराजित गरी अति क्रोधयुक्त शत्रुलाई पछिल्तिर घँच्याट। यसै गरी आफ्नो कलायुक्त रथ सधैं अगाडि राख।

त्वं जिगेथ न धना रुरोधिथार्भेष्वाजा मघवन्महत्सु च।
त्वामुग्रमवसे सं शिशीमस्यथा न इन्द्र हवनेषु चोदय ॥१०॥

हे धनवान् इन्द्रदेव ! तिमी शत्रुहरूमाथि विजयी हुन्छौ। त्यसरी प्राप्त गरेको धन आफूमा मात्रै सीमित राख्दैनौ। सानाठूला सबै युद्धमा आफ्नो संरक्षणका लागि योद्धाहरू इन्द्रदेवलाई बोलाउँछन्। त्यसैले हामीलाई उचित मार्गदर्शन गराऊ।

विश्वाहेन्द्रो अधिवक्ता नो अस्त्वपरिह्वृताः सनुयाम वाजम्।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥११॥

हे इन्द्रदेव ! तिमी सधैं हाम्रा पक्षका अधिवक्ता हौ। हामी पनि द्वेषपूर्ण व्यवहार नगरीकन भएर अन्न आदि प्राप्त गरौं, त्यसैले मित्र, वरुण, अदिति, सिन्धु, पृथ्वी र दिव्यलोक सबैले हामीलाई वैभव र सम्पत्ति प्रदान गरुन्।

[सूक्त – १०२]

ऋषि – कुत्स आङ्गिरस। देवता – इन्द्र। छन्द – त्रिष्टुप्।

तत्त इन्द्रियं परमं पराचैरधारयन्त कवयः पुरेदम्।
क्षमेदमन्यद्दिव्य१न्यदस्य समी पृच्यते समनेव केतुः ॥१॥

हे इन्द्रदेव ! तिम्रा पराक्रम शक्तिलाई नयाँ खालका विद्वान्हरूले उहिलेदेखि नै धारण गरेका छन्।

तिमी शत्रुलाई पराजित गर्ने कर्मका सक्षम छौ भन्ने ती विद्वान्हरूले मानेका छन्। भूलोकमा अग्नि रूपमा र स्वर्गलोकमा सूर्यको प्रकाशका रूपमा गरी तिम्रा रूपका दुई धाराहरू छन्। युद्धस्थलमा विपरीत दिशाबाट आइरहेको भन्डाभैँ यी दुवै धाराहरू अन्तरिक्षलोकमा परस्परमा एकजुट हुन्छन्।

**स धारयत्पृथिवीं पप्रथच्च वज्रेण हत्वा निरपः ससर्ज।**
**अहन्नहिमभिनद्रौहिणं व्यहन्व्यंसं मघवा शचीभिः ॥२॥**

इन्द्रदेवले पृथ्वीलाई धारण गरे र त्यसलाई विस्तार गराए। नदीको प्रवाह रोक्ने अहि, रौहिण र व्यंस आदि नाम भएका दैत्यहरूलाई इन्द्रदेवले वज्ररूपी तीक्ष्ण शक्तिधाराले संहार गरे। त्यसपछि मात्रै रोकिएको जलधारा फेरि प्रवाहित भयो।

**स जातूभर्मा श्रद्धान ओजः पुरो विभिन्दन्नचरद्वि दासीः।**
**विद्वान्वज्रिन्दस्यवे हेतिमस्यार्यं सहो वर्धया द्युम्नमिन्द्र ॥३॥**

विद्युत्जस्तै तीक्ष्ण धार भएका आयुधहरूले युक्त भएर आत्मविश्वासका साथ इन्द्रदेव दस्युको नगर ध्वस्त गर्दछन् र निर्विघ्न भएर विचरण गर्दछन्। हे ज्ञानसम्पन्न वज्रधारी इन्द्रदेव ! स्तोताका शत्रुमाथि पनि अस्त्र प्रहार गर्दै आर्यहरूको बल र कीर्ति बढाऊ।

**तदूचुषे मानुषेमा युगानि कीर्तेन्यं मघवा नाम बिभ्रत्।**
**उपप्रयन्दस्युहत्याय वज्री यद्ध सूनुः श्रवसे नाम दधे ॥४॥**

शक्तिको पुत्ररूपी वज्र धारण गरेपछि इन्द्रदेवले शत्रु संहार गर्ने क्षेत्रमा अगाडि बढेर मघवा भन्ने नाम कमाए। त्यो प्रशंसनीय नाम उनले युगौँयुगसम्म धारण गरे।

**तदस्येदं पश्यता भूरि पुष्टं श्रदिन्द्रस्य धत्तन वीर्याय।**
**स गा अविन्दत्सो अविन्ददश्वान्त्स ओषधीः सो अपः स वनानि ॥५॥**

इन्द्रदेवले आफ्ना सामर्थ्यले गाई, अश्व, औषधी, जल र वनहरू प्राप्त गरे। त्यसैले हे मनुष्यहरू हो ! इन्द्रदेवका यी अत्यन्त पराक्रमपूर्ण कार्यहरूलाई हेर र तिनका अद्भुत शक्तिप्रति आत्मविश्वास जगाओ।

**भूरिकर्मणे वृषभाय वृष्णे सत्यशुष्माय सुनवाम सोमम्।**
**य आदृत्या परिपन्थीव शूरोऽयज्वनो विभजन्नेति वेदः ॥६॥**

शक्तिशाली इन्द्रदेवले लालची, दुष्ट, लुटारहरूबाट धन एकत्रित गरे। यज्ञीय कर्मरहित राक्षसी वृत्ति भएका दैत्यको त्यस्तो धन उनी ज्ञानीहरूलाई हस्तान्तरण गर्दछन्। त्यसो गरेपछि ती ज्ञानीहरू सम्मानित हुन्छन्। यस्तो असल काम सम्पन्न गर्ने, महान् दाता र सत्यको बलयुक्त इन्द्रदेवका लागि हामी सोम तयार गरौँ।

**तदिन्द्र प्रेव वीर्यं चकर्थ यत्ससन्तं वज्रेणाबोधयोऽहिम्।**
**अनु त्वा पत्नीर्हृषितं वयश्च विश्वे देवासो अमदन्ननु त्वा ॥७॥**

हे इन्द्रदेव ! सुतेका वृत्रमाथि तिमीले वज्रको प्रहार गरेर जगायौ। त्यसपछि उसलाई युद्धमा पराजित गरायौ। वास्तवमा यो तिम्रो परम शौर्य हो। यसै काममा तिमी परम आनन्दित भएको देखेर सबै देवता र उनका पत्नीहरूले अति हर्षको अनुभव गरे।

**शुष्णं पिप्रुं कुयवं वृत्रमिन्द्र यदावधीर्वि पुरः शम्बरस्य।**
**तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥८॥**

हे इन्द्रदेव ! तिमीले शुष्ण, पिप्रु र वृत्रको वध गरेर शम्बासुरका किल्लाहरू ध्वस्त पार्दा मित्र, वरुण, अदिति, सिन्धु, पृथिवी र दिव्यलोकले हाम्रो उत्साह बढाऊन्।

## [सूक्त - १०४]

**ऋषि - कुत्स आङ्गिरस। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।**

**योनिष्ट इन्द्र निषदे अकारि तमा नि षीद स्वानो नार्वा।**
**विमुच्या वयोऽवसायाश्वान्दोषा वस्तोर्वहीयसः प्रपित्वे ॥१॥**

हे इन्द्रदेव ! तिम्रा लागि असल ठाउँको व्यवस्था हामीले गरेका छौँ। रथवाहक अश्व बन्धनबाट मुक्त भएपछि हिँल्लिन्छन्। तिनै घोडामा रातदिन दगुर्दै यज्ञस्थलमा आएर निर्धारित आसनमा विराजमान होऊ।

ओ त्ये नर इन्द्रमूतये गुर्नू चित्तान्सद्यो अध्वनो जगम्यात्।
देवासो मन्युं दासस्य श्चम्नन्ते न आ वक्षन्त्सुविताय वर्णम्॥२॥

सुरक्षाका भावनाले प्रेरित भएर आफ्ना नजिकै आएका मानिसहरूलाई इन्द्रदेवले तुरुन्तै उत्तम मार्गदर्शन गराए। देवशक्तिले दुष्कर्मीहरूको क्रोधी भावना समाप्त गरुन्। यज्ञीय कार्य पूरा गर्नका निमित्त वरण गरिने इन्द्रदेवलाई उनीहरू हाम्रा यज्ञस्थलमा आउने प्रेरणा दिऊन्।

अव त्मना भरते केतवेदा अव त्मना भरते फेनमुदन्।
क्षीरेण स्नातः कुयवस्य योषे हते ते स्यातां प्रवणे शिफायाः॥३॥

कुहिएको अन्नरूपी कुयव राक्षसले धनको मर्म बुझेर अपहरण गर्दछ। फिँज उठेको पानीको प्रवाह आफ्नो हीन उद्देश्य पूरा गर्नका लागि रोक्दछ। त्यस कुयव राक्षसका दुई पत्नी शिफा नदीका धारले मरुन्।

युयोप नाभिरुपरस्यायोः प्र पूर्वाभिस्तिरते राष्टि शूरः।
अञ्जसी कुलिशी वीरपत्नी पयो हिन्वाना उदभिर्भरन्ते॥४॥

त्यस कुयव राक्षसको शक्ति जलको केन्द्रमा लुकेको हुन्छ। अपहृत जलबाट यो वीर तेजस्वी बन्ने गर्दछ। अञ्जसी नामकी गुणसम्पन्न र कुलिश नामकी जाँगरिली यसका दुई वीर पत्नीले पानीका सहायताले कुयवलाई तृप्त गराइरहन्छन्।

प्रति यत्स्या नीथादर्शि दस्योरोको नाच्छा सदनं जानती गात्।
अध स्मा नो मघवञ्चर्कृतादिन्मा नो मघेव निष्षपी परा दाः॥५॥

हे इन्द्रदेव! बाटो चिनेका गाईले आफ्नो गोठ ठम्याएझैँ दुष्टहरूले हाम्रो घर चिनिसके। त्यसैले हे ऐश्वर्यवान् इन्द्रदेव! राक्षसी उपद्रवबाट हाम्रो सुरक्षा गर। व्यभिचारी पुरुषले धन अपव्यय गरेझैँ हामीलाई खेर नफाल।

स त्वं न इन्द्र सूर्ये सो अप्स्वनागास्त्व आ भज जीवशंसे।
मान्तरां भुजमा रीरिषो नः श्रद्धितं ते महत इन्द्रियाय॥६॥

हे इन्द्रदेव! हामीलाई सूर्यको प्रकाश र अन्न उपलब्ध गराऊ। यी दुई पदार्थले कहिल्यै हामीलाई खाँचो नहोस्। सम्पूर्ण प्राणीहरूका लागि कल्याणकारी र पापरहित मार्ग हामी सधैँ अनुसरण गरौँ। गर्भमा रहेका हाम्रा सन्तानलाई तिमी पीडित नगर। हामीलाई तिम्रा सामर्थ्य शक्तिमा पूरा विश्वास छ।

अधा मन्ये श्रत्ते अस्मा अधायि वृषा चोदस्व महते धनाय।
मा नो अकृते पुरुहूत योनाविन्द्र क्षुध्यद्भ्यो वय आसुतिं दाः॥७॥

हे शक्तिसम्पन्न, अति वन्दनीय इन्द्रदेव! तिमीप्रति हाम्रो अत्यन्त सम्मानित भावना छ। तिम्रा बलप्रति हाम्रो श्रद्धा रहन्छ। हामीलाई वैभव प्राप्तिका लागि प्रेरणा प्रदान गर। धनको कमी भएका ठाउँमा हामीलाई कहिल्यै नछोड। ऐश्वर्यसम्पन्न भएर भोकतिर्खाले पिरोलिएका मानिसहरूलाई हामी खान पिउन दिऔँ।

मा नो वधीरिन्द्र मा परा दा मा नः प्रिया भोजनानि प्र मोषीः।
आण्डा मा नो मघवञ्छक्र निर्भेन्मा नः पात्रा भेत्सहजानुषाणि॥८॥

हे सर्वसमर्थ, ऐश्वर्यसम्पन्न इन्द्रदेव! हाम्रो हिंसा र त्याग नगर। हाम्रो उचित आहार र प्रिय पदार्थ नष्ट नगर। गर्भमा रहेका हाम्रा सन्तान र बालकको अकालमृत्यु नहोस्।

अर्वाङेहि सोमकामं त्वाहुरयं सुतस्तस्य पिबा मदाय।
उरुव्यचा जठर आ वृषस्व पितेव नः शृणुहि हूयमानः॥९॥

हे सोम मन पराउने इन्द्रदेव! तिमी हाम्रा सम्मुख प्रस्तुत होऊ। यहाँ तिम्रा लागि सोम तयार छ, आनन्दपूर्वक पान गरेर आफूलाई तृप्त गराऊ। हामीले आह्वान गर्दा पिताले झैँ प्रार्थना सुनिदिने कृपा गर।

[सूक्त - १०५]

ऋषि - त्रित आप्त्य कुत्स आङ्गिरस। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

**चन्द्रमा अप्स्वन्तरा सुपर्णो धावते दिवि।**
**न वो हिरण्यनेमयः पदं विन्दन्ति विद्युतो वित्तं मे अस्य रोदसी ॥१॥**

अन्तरिक्षमा चन्द्रमा र द्युलोकमा सूर्य दगुर्दै छन्। ती लोकको स्तर सुनौलो धार हुने विद्युत्का विषयमा जान्ने योग्य छैन। हे द्युलोक र भूलोक ! हाम्रो भावना बुझ।

**अर्थमिद्वा उ अर्थिन आ जाया युवते पतिम्।**
**तुञ्जाते वृष्ण्यं पयः परिदाय रसं दुहे वित्तं मे अस्य रोदसी ॥२॥**

उद्देश्यपूर्ण कार्य गर्नेहरूले आफ्नो उद्देश्य प्राप्त गर्दछन्। पत्नीले योग्य पति पाउँछे। दुवैले सन्तान प्राप्त गर्दछन्। हे द्युलोक एवं पृथिवी देवी ! तिमी हाम्रो भावना बुझ।

**मो षु देवा अदः स्वरव पादि दिवस्परि।**
**मा सोम्यस्य शंभुवः शूने भूम कदा चन वित्तं मे अस्य रोदसी ॥३॥**

हे देवगण ! हाम्रो तेज स्वर्गलोकभन्दा निम्न दिशामा जाने कहिल्यै नहोस्। आनन्द प्रदायक सोमविनाको स्थानमा कहिल्यै हाम्रो निवास नहोस्। हे द्युलोक र भूलोक ! हाम्रा यस प्रार्थनाको अभिप्राय तिमीहरू बुझिदेओ।

**यज्ञं पृच्छाम्यवमं स तद्दूतो वि वोचति।**
**क्व ऋतं पूर्व्यं गतं कस्तद्बिभर्ति नूतनो वित्तं मे अस्य रोदसी ॥४॥**

हामी यहाँ उपस्थित अग्निसित प्राचीन सरल भावरूपी शाश्वत नियमहरू कता हराए, नयाँ कुन पुरुषले पुराना नियम पालन गरेको छ ? भनी सोध्छौं। देवदूत अग्निले उत्तर दिऊन्। हे पृथिवी र द्युलोक ! हाम्रा यी महत्त्वपूर्ण जिज्ञासाहरू सुन र शान्त गराओ।

**अमी ये देवाः स्थन त्रिष्वा रोचने दिवः।**
**कद्व ऋतं कदनृतं क्व प्रत्ना व आहुतिर्वित्तं मे अस्य रोदसी ॥५॥**

हे देवता हो ! तीन लोकमध्ये तिमीहरूको निवास द्युलोकमा छ। तिमीहरूको ऋत वा सत्य रूप के हो ? अनृत वा मायायुक्त रूप कहाँ छ ? तिमीहरूले सृष्टिकालमा जुन आहुति हाल्यौ, त्यो खै ? द्युलोक र पृथिवीले हाम्रो भावना बुझून्।

**कद्व ऋतस्य धर्णसि कद्वरुणस्य चक्षणम्।**
**कदर्यम्णो महस्पथाति क्रामेम दूढ्यो वित्तं मे अस्य रोदसी ॥६॥**

तिमीहरूको श्रेष्ठ सत्य निर्वाह गर्ने नियम खै ? वरुणका व्यवस्थाको दृष्टि कुन हो ? हामीलाई दुष्टबाट छुटकारा दिलाउने अर्यमाका सर्वश्रेष्ठ मार्ग कुनकुन हुन् ? हे द्युलोक र पृथिवी हाम्रो यस जिज्ञासाको अभिप्राय बुझ।

**अहं सो अस्मि यः पुरा सुते वदामि कानी चित्।**
**तं मा व्यन्त्याध्योऽ वृको न तृष्णजं मृगं वित्तं मे अस्य रोदसी ॥७॥**

उहिलको यज्ञमा सोम पेल्दाखेरि हामीले स्तोत्रको पाठ गरेका थियौं, तर यस बेला मनको अवस्था ब्वाँसाले खानका लागि लखेट्दा तिर्खाएको हरिणकै जस्तो भएर पिरोलिएको छ। हे द्यावा र पृथिवी देवी ! हाम्रो पिर बुझ र हटाइदेओ।

**सं मा तपन्त्यभितः सपत्नीरिव पर्शवः।**
**मूषो न शिश्ना व्यदन्ति माध्यः स्तोतारं ते शतक्रतो वित्तं मे अस्य रोदसी ॥८॥**

दुई सौताजस्ता दायाँबायाँ रहेका कामनाहरूले हामीलाई सताइरहेका छन्। हे सयौं यज्ञ गरेर शतक्रतु नाम पाएका इन्द्रदेव ! माडा लगाएको धागो मुसाले खाएझैं तिम्रो स्तुति गर्नेहरूको मन पनि दुःखले सताइरहेको छ। हे द्यावा र पृथिवी देवी ! हाम्रो पिर बुझ र हटाइदेओ।

**अमी ये सप्त रश्मयस्तत्रा मे नाभिरातता।**
**त्रितस्तद्वेदाप्त्यः स जामित्वाय रेभति वित्तं मे अस्य रोदसी ॥९॥**

सूर्यका सप्तरङ्गी किरणहरू जहाँसम्म छन् हाम्रो नाभीक्षेत्र त्यहाँसम्म फैलेको छ। यो कुरो जलका पुत्र त्रितलाई थाहा छ। त्यसैले प्रीतियुक्त मैत्रीभावका लागि हामी प्रार्थना गर्दछौं। हे द्यावापृथिवी ! तिमीहरू हाम्रा प्रार्थनाको अभिप्राय बुझिदेओ।

अमी ये पञ्चोक्षणो मध्ये तस्थुर्महो दिवः।
देवत्रा नु प्रवाच्यं सध्रीचीना नि वावृतुर्वित्तं मे अस्य रोदसी ॥१०॥

वर्षा गराउने शक्तिशाली पाँच देवताहरू विशाल द्युलोकमा रहन्छन्। तिनीहरू देवताहरूमा प्रशंसनीय छन् र आह्वान गर्नासाथ पूजा ग्रहण गर्न उपस्थित हुन्छन्। त्यहाँ तृप्त हुन्छन् र जसरी मनसित इन्द्रियहरू पनि एकाग्र हुन्छन् त्यसरी नै आफ्नो स्थानमा फिर्ता जान्छन्। हे द्युलोक र पृथिवी देवी ! हाम्रो यो प्रार्थना तिमीहरू बुझिदेओ।

सुपर्णा एत आसते मध्य आरोधने दिवः।
ते सेधन्ति पथो वृकं तरन्तं यह्वतीरपो वित्तं मे अस्य रोदसी ॥११॥

उत्तम पङ्ख भएका यी पक्षी दिव्यलोकका मध्य भागमा रहेका छन्, तिनी व्यापक जलरूपी रात्रिका अन्धकारमा रुमल्लिएकाहरूलाई प्रकाशको मार्ग प्रशस्त गर्दछन् र व्वाँसाबाट जोगाउँछन्। हे द्यावा र पृथिवी देवी हाम्रा यस प्रार्थनामा ध्यान देओ।

नव्यं तदुक्थ्यं हितं देवासः सुप्रवाचनम्।
ऋतमर्षन्ति सिन्धवः सत्यं तातान सूर्यो वित्तं मे अस्य रोदसी ॥१२॥

हे देवताहरू हो ! नवीन स्तोत्रहरू प्रशंसनीय, गाउन योग्य र कल्याणकारक छन्। नदीले ऋतुअनुसार चल्नका लागि प्रेरणा दिन्छन्। सूर्यदेवले सत्यको सन्देश दिन्छन्। हे द्यावा र पृथिवी देवी ! हाम्रा प्रार्थनाको अभिप्राय बुझ।

अग्ने तव त्यदुक्थ्यं देवेष्वस्त्याप्यम्।
स नः सत्तो मनुष्वदा देवान्यक्षि विदुष्टरो वित्तं मे अस्य रोदसी ॥१३॥

हे अग्निदेव ! देवताहरूसित तिम्रो आफन्त भाव प्रशंसनीय छ। तिमी विशिष्ट ज्ञानले सम्पन्न छौ र मनुष्यझैं हाम्रो यज्ञमा आऊ। यहाँ आएर, देवताहरूलाई हाम्रा यज्ञमा बोलाऊ। हे द्यावा र पृथिवी देवी ! हाम्रा प्रार्थनाको अभिप्राय बुझ।

सत्तो होता मनुष्वदा देवाँ अच्छा विदुष्टरः।
अग्निर्हव्या सुषूदति देवो देवेषु मेधिरो वित्तं मे अस्य रोदसी ॥१४॥

मनुष्यझैं यज्ञमा विराजमान, ज्ञानी होता र देवताहरूमा विशिष्ट ज्ञानसम्पन्न अग्निदेवले देवताहरूका लागि हविष्यान्न पुऱ्याउँछन्। हे द्युलोक र पृथिवी देवी ! हाम्रा जिज्ञासाको अभिप्राय बुझ।

ब्रह्मा कृणोति वरुणो गातुविदं तमीमहे।
व्यूर्णोति हृदा मतिं नव्यो जायतामृतं वित्तं मे अस्य रोदसी ॥१५॥

वरुणदेवले मन्त्ररूपी स्तोत्रको रचना गर्दछन्। हामी स्तुतिमन्त्रले मार्गदर्शक प्रभुको प्रार्थना गर्दछौं। उनले हृदयबाट सद्बुद्धि प्रकट गराउँछन्। त्यसो भएपछि नयाँ सत्यको मार्ग प्रशस्त हुनेछ। हे द्युलोक र पृथिवी देवी ! हाम्रा प्रार्थनाको अभिप्राय बुझ।

असौ यः पन्था आदित्यो दिवि प्रवाच्यं कृतः।
न स देवा अतिक्रमे तं मर्तासो न पश्यथ वित्तं मे अस्य रोदसी ॥१६॥

हे देवताहरू हो ! सूर्यदेवको मार्ग प्रकाशरूपी छ। यो मार्ग दिव्यलोकमा स्तुति गर्न योग्य छ। त्यसको उल्लङ्घन तिम्रा लागि उपयुक्त हुँदैन। हे मनुष्य हो ! त्यो मार्ग सर्वसाधारण पुग्नेभन्दा पर छ। हे पृथिवी देवी ! तिमी हाम्रो प्रार्थनाको अभिप्राय बुझ।

त्रितः कूपेऽवहितो देवान्हवत ऊतये।
तच्छुश्राव बृहस्पतिः कृण्वन्नंहूरणादुरु वित्तं मे अस्य रोदसी ॥१७॥

पापरूपी कूपमा खसेका त्रितले आफ्नो सुरक्षाका लागि देवताहरूको आह्वान गरे। ज्ञानरूपी बृहस्पतिदेवले उनको प्रार्थना सुनेपछि निकालेर कष्टबाट मुक्ति पाउने व्यापक मार्ग खोलिदिए। हे द्युलोक र पृथिवी देवी ! हाम्रा यस प्रार्थनातर्फ ध्यान देओ।

अरुणो मा सकृद्वृकः पथा यन्तं ददर्श हि।
उज्जिहीते निचाय्या तष्टेव पृष्ट्यामयी वित्तं मे अस्य रोदसी ॥१८॥

कुँजो ढाड भएको सिकर्मीजस्तै बाङ्गो चन्द्रमा आफ्ना मार्गमा हिँड्दै गरेको हामी सधैं देख्छौं। तल पुगेर लुक्छ र ऊ फेरि सधैं झुल्किन्छ। हे द्युलोक र पृथिवी देवी ! हाम्रा यस स्थितितर्फ ध्यान देओ।

एनाङ्‌गूषेण वयमिन्द्रवन्तोऽभि ष्याम वृजने सर्ववीराः।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥१९॥

इन्द्रदेव तथा सबै वीर पुरुषले युक्त भएर हामी यस स्तोत्रबाट सङ्ग्राममा शत्रु पराजित गरौं। मित्र, वरुण, अदिति, सिन्धु, पृथिवी र द्युलोक आदि देवताले हाम्रो यो स्तोत्र समर्थन गरुन्।

[सूक्त – १०६]

ऋषि – कुत्स आङ्गिरस। देवता – विश्वेदेवा। छन्द – जगती त्रिष्टुप्।

इन्द्रं मित्रं वरुणमग्निमूतये मारुतं शर्धो अदितिं हवामहे।
रथं न दुर्गाद्वसवः सुदानवो विश्वस्मान्नो अंहसो निष्पिपर्तन ॥१॥

हामी सबै आफ्नो सुरक्षाका लागि इन्द्र, मित्र, वरुण, अग्नि, मरुत्‌गण र अदितिलाई आह्वान गर्दछौं। हे उत्तम धनदाता वसु हो ! दुर्गम मार्गबाट रथ निकालेझैं तिमीहरू सम्पूर्ण आपद्‌बाट हामीलाई पार लगाइदेओ।

त आदित्या आ गता सर्वतातये भूत देवा वृत्रतूर्येषु शम्भुवः।
रथं न दुर्गाद्वसवः सुदानवो विश्वस्मान्नो अंहसो निष्पिपर्तन ॥२॥

हे आदित्यगण ! तिमीहरू सबै हाम्रा यस अभीष्ट यज्ञमा आओ। असुरको संहार गर्ने युद्ध हाम्रा लागि सुखप्रद होस्। हे उत्तम दानदाता वसुदेवता हो ! दुर्गम मार्गबाट रथ निकालेझैं तिमीहरू सबैले आपद्‌बाट हामीलाई पार लगाइदेओ।

अवन्तु नः पितरः सुप्रवाचना उत देवी देवपुत्रे ऋतावृधा।
रथं न दुर्गाद्वसवः सुदानवो विश्वस्मान्नो अंहसो निष्पिपर्तन ॥३॥

अत्यन्त प्रशंसनीय पितृहरू र सत्यतर्फ प्रेरक देवमाताहरू हाम्रा संरक्षक होऊन्। हे दानदाता वसुदेवता हो ! दुर्गम मार्गबाट रथ निकालेझैं सम्पूर्ण आपद्‌बाट हामीलाई पार लगाइदेओ।

नराशंसं वाजिनं वाजयन्निह क्षयद्वीरं पूषणं सुम्नैरीमहे।
रथं न दुर्गाद्वसवः सुदानवो विश्वस्मान्नो अंहसो निष्पिपर्तन ॥४॥

मानिसहरूद्वारा प्रशंसित, बलशाली, वीरका शक्तिले संवर्धित गराउने, वीरका स्वामी पूषादेवलाई हामी उत्तम भावनाले स्तुति गर्दछौं। हे उत्तम दानदाता वसुदेवता हो ! दुर्गम मार्गबाट रथ निकालेझैं तिमीहरू सम्पूर्ण आपद्‌बाट हामीलाई पार लगाइदेओ।

बृहस्पते सदमिन्नः सुगं कृधि शं योर्यत्ते मनुर्हितं तदीमहे।
रथं न दुर्गाद्वसवः सुदानवो विश्वस्मान्नो अंहसो निष्पिपर्तन ॥५॥

हे बृहस्पति ! हाम्रो मार्ग सधैं सर्वसुलभ गराऊ। तिमीसित जुन लोककल्याणकारी, श्रेष्ठ, सुखप्रदायक र दुःखनिवारक साधन छ, हामी त्यसैको कामना गर्दछौं। हे उत्तम दानदाता वसुदेवता हो ! दुर्गम मार्गबाट रथ निकालेझैं तिमीहरू सम्पूर्ण आपद्‌बाट हामीलाई पार लगाइदेओ।

इन्द्रं कुत्सो वृत्रहणं शचीपतिं काटे निबाळ्ह ऋषिरह्वदूतये।
रथं न दुर्गाद्वसवः सुदानवो विश्वस्मान्नो अंहसो निष्पिपर्तन ॥६॥

पापरूपी कूपमा खसेका कुत्स ऋषिले शत्रुसंहारक र सामर्थ्यवान् इन्द्रदेवलाई आह्वान गरे। हे उत्तम दानदाता वसुदेवता हो ! दुर्गम मार्गबाट रथ निकालेझैं तिमीहरू सम्पूर्ण आपद्‌बाट हामीलाई पार लगाइदेओ।

देवैर्नो देव्यदितिर्नि पातु देवस्त्राता त्रायतामप्रयुच्छन्।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥७॥

देवमाता अदितिले देवसमूहका साथमा हामीलाई संरक्षित गरुन्। संरक्षण साधनले युक्त अन्य देवगण पनि आलस्यरहित भएर हाम्रो सुरक्षा गरुन्। हाम्रो यो प्रार्थना मित्र, वरुण, अदिति, सिन्धु, पृथ्वी र द्युलोक आदि देवगणले अनुमोदन गरुन्।

[सूक्त – १०७]

ऋषि – कुत्स आङ्गिरस। देवता – विश्वेदेवा। छन्द – त्रिष्टुप्।

यज्ञो देवानां प्रत्येति सुम्नमादित्यासो भवता मृळयन्तः।
आ वोऽर्वाची सुमतिर्ववृत्यादंहोश्चिद्या वरिवोवित्तरासत् ॥१॥

देवताहरूका लागि यज्ञ सुखदायक हुन्छ। हे आदित्यगण ! हाम्रा लागि तिमीहरू कल्याणकारी

छौं। तिमीहरूको श्रेष्ठ विवेकशील प्रेरणा हामीलाई प्राप्त होस्, त्यस प्रेरणाले हामीलाई कष्टबाट संरक्षित गर्दै श्रेष्ठ सम्पदा प्रदान गरोस्।

**उप नो देवा अवसा गमन्त्वङ्गिरसां सामभिः स्तूयमानाः।**
**इन्द्र इन्द्रियैर्मरुतो मरुद्भिरादित्यैर्नो अदितिः शर्म यंसत् ॥२॥**

अङ्गिराहरूले सामगान गर्दै प्रशंसा गरिएका देवता संरक्षण साधनले सम्पन्न होऊन् र हामीकहाँ आऊन्। आफ्ना वीर मरुत्हरू, अदिति र आदित्यका शक्ति सामर्थ्यद्वारा इन्द्रदेवले हामीलाई सुख प्रदान गरुन्।

**तन्न इन्द्रस्तद्वरुणस्तदग्निस्तदर्यमा तत्सविता चनो धात्।**
**तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥३॥**

इन्द्र, वरुण, अग्नि, अर्यमा र सूर्यदेवले हाम्रा लागि मधुर अन्न प्रदान गरुन्। हाम्रो कामना मित्र, वरुण, अदिति, सिन्धु, पृथ्वी र द्युलोक आदि देवताले समर्थन गरुन्।

**[सूक्त - १०८]**

**ऋषि** – कुत्स आङ्गिरस। **देवता** – इन्द्राग्नी। **छन्द** – त्रिष्टुप्।

**य इन्द्राग्नी चित्रतमो रथो वामभि विश्वानि भुवनानि चष्टे।**
**तेना यातं सरथं तस्थिवांसाथा सोमस्य पिबतं सुतस्य ॥१॥**

हे इन्द्राग्नि ! तिमीहरू अद्‌भुत रथद्वारा सबै लोकलाई हेर्दछौ। त्यस रथमा दुवै सँगै बसेर हामीकहाँ आओ र यहाँ पेलेर तयार गरिराखेको सोमरस पान गर।

**यावदिदं भुवनं विश्वमस्त्युरुव्यचा वरिमता गभीरम्।**
**तावाँ अयं पातवे सोमो अस्त्वरमिन्द्राग्नी मनसे युवभ्याम् ॥२॥**

सिङ्गो विश्व जति विशाल, महान् र गम्भीरतायुक्त छ, हे इन्द्राग्निदेव ! तिमीहरूले सेवन गर्नका लागि तयार गरिएको प्रभावशाली सोमरस उत्तिकै प्रचुर मात्रमा प्राप्त होस्।

**चक्राथे हि सध्र्यङ्नाम भद्रं सध्रीचीना वृत्रहणा उत स्थः।**
**ताविन्द्राग्नी सध्र्यञ्चा निषद्या वृष्णः सोमस्य वृषणा वृषेथाम् ॥३॥**

हे इन्द्राग्नि ! तिमीहरूको संयुक्त शक्ति विशेष कल्याणकारी छ। हे वृत्रहन्ताहरू हो ! तिमीहरू संयुक्त रूपमै वास गर्दछौ। हे शक्तिसम्पन्न वीरहरू हो ! तिमीहरू दुवै एकै साथ बसेर सोमरस पान गरी आफ्नो शक्ति बढाओ।

**समिद्धेष्वग्निष्वानजाना यतस्रुचा बर्हिरु तिस्तिराणा।**
**तीव्रैः सोमैः परिषिक्तेभिरर्वागेन्द्राग्नी सौमनसाय यातम् ॥४॥**

इन्द्र र अग्निदेव हो ! यज्ञमा अग्नि प्रज्वलित भएपछि तिमीहरूका लागि आहुति प्रदान गर्न घिउले भरिएको चमस पात्र राखिएको छ र कुशको आसन ओछ्याइएको छ। जलमा मिसाएर तयार गरिएको स्वादिलो सोमरस पिउनका लागि हाम्रा यज्ञमा आओ।

**यानीन्द्राग्नी चक्रथुर्वीर्याणि यानि रूपाण्युत वृष्ण्यानि।**
**या वां प्रत्नानि सख्या शिवानि तेभिः सोमस्य पिबतं सुतस्य ॥५॥**

हे इन्द्र र अग्निदेव हो ! तिमीहरूले आफ्नो शक्ति देखाउने जुन काम गर्‍यौ, प्रदर्शन गर्ने बेलामा जसरी शक्ति प्रकट गर्‍यौ र उहिलेदेखि प्रचलित जुन हितकारी मित्र भावलाई प्रेरित गर्ने कामहरू छन्, ती सबै सम्झ र सोमरस पान गर्न यहाँ आओ।

**यदब्रवं प्रथमं वां वृणानो ३ऽयं सोमो असुरैर्नो विहव्यः।**
**तां सत्यां श्रद्धामभ्या हि यातमथा सोमस्य पिबतं सुतस्य ॥६॥**

तिमीहरू दुवैको इच्छा बुझेर सबैभन्दा पहिले तिमीहरूकै निम्ति याज्ञिकहरूले सोमरस तयार गरेछन् भन्ने हामीले जान्यौं। त्यसैले हाम्रो हार्दिक श्रद्धाअनुसार तिमीहरू दुवै हाम्रा यज्ञमा आएर तयार गरिएको सोमरस सेवन गर।

**यदिन्द्राग्नी मदथः स्वे दुरोणे यद् ब्रह्मणि राजनि वा यजत्रा।**
**अतः परि वृषणावा हि यातमथा सोमस्य पिबतं सुतस्य ॥७॥**

हे इन्द्र र यज्ञका अग्निदेव ! यजमानको घर, ज्ञानसम्पन्न साधकको वाणी वा राजाको दरबार जहाँसुकै तिमीहरू आनन्दयुक्त रहन्छौ। ती स्थानहरूबाट तिमीहरू हाम्रा यज्ञमा आओ। यो तयार राखिएको सोमरस पान गर।

यदिन्द्राग्नी यदुषु तुर्वशेषु यद् द्रुह्युष्वनुषु पूरुषु स्थः।
अतः परि वृषणावा हि यातमथा सोमस्य पिबतं सुतस्य ॥८॥

हे इन्द्र र अग्निदेव ! तिमीहरू दुवै यदु, तुर्वश, द्रुह्य, अनु र पुरु आदि जसका यज्ञमा छौ भने पनि त्यहाँबाट हाम्रै यज्ञमा आओ र तयार पारिएको सोमरस पान गर।

यदिन्द्राग्नी अवमस्यां पृथिव्यां मध्यमस्यां परमस्यामुत स्थः।
अतः परि वृषणावा हि यातमथा सोमस्य पिबतं सुतस्य ॥९॥

हे सामर्थ्यवान् इन्द्र र अग्निदेव ! तिमीहरू दुवै माथि, तल या बीचमा पृथ्वीको जुनसुकै भागमा भए पनि यस यज्ञमा आएर सोमरसको पान अवश्य गर।

यदिन्द्राग्नी परमस्यां पृथिव्यां मध्यमस्यामवमस्यामुत स्थः।
अतः परि वृषणावा हि यातमथा सोमस्य पिबतं सुतस्य ॥१०॥

हे सामर्थ्यवान् इन्द्र र अग्निदेव ! तिमीहरू दुवै माथिल्लो स्वर्गलोक, मध्य भागको अन्तरिक्ष वा तलको भूलोक जहाँ भए पनि यज्ञमा अवश्य आएर सोमरस पान गर।

यदिन्द्राग्नी दिवि ष्ठो यत्पृथिव्यां यत्पर्वतेष्वोषधीष्वप्सु।
अतः परि वृषणावा हि यातमथा सोमस्य पिबतं सुतस्य ॥११॥

हे सामर्थ्यवान् इन्द्र र अग्निदेव ! तिमीहरू दुवै द्युलोक, पृथ्वी, पर्वत, औषधि वा जलमा जहाँसुकै भए पनि त्यहाँबाट हाम्रा यज्ञको तयारी सोमरस पिउन आओ।

यदिन्द्राग्नी उदिता सूर्यस्य मध्ये दिवः स्वधया मादयेथे।
अतः परि वृषणावा हि यातमथा सोमस्य पिबतं सुतस्य ॥१२॥

हे सामर्थ्यवान् इन्द्र र अग्निदेव ! तिमीहरू दुवै स्वर्गलोकका बीचमा, सूर्योदयका समयमा अथवा अन्न खाएर आनन्द मनाइरहेको अवस्थामा जहाँ, जसरी रहेका भए पनि हाम्रा यज्ञमा आएर सोमरस पान गर।

एवेन्द्राग्नी पपिवांसा सुतस्य विश्वास्मभ्यं सं जयतं धनानि।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥१३॥

हे सामर्थ्यवान् इन्द्र र अग्निदेव ! सोमरस पान गरेर हर्षित भएपछि सबै खालका सम्पदा जितेर हामीलाई प्रदान गर। हाम्रो अभीष्ट कामना पूर्तिका लागि मित्र, वरुण, अदिति, पृथ्वी र दिव्यलोकका सबै देवताहरू सहायक होऊन्।

[सूक्त - १०९]

ऋषि - कुत्स आङ्गिरस। देवता - इन्द्राग्नी। छन्द - त्रिष्टुप्।

वि ह्यख्यं मनसा वस्य इच्छन्निन्द्राग्नी ज्ञास उत वा सजातान्।
नान्या युवत्प्रमतिरस्ति मह्यं स वां धियं वाजयन्तीमतक्षम् ॥१॥

हे इन्द्र र अग्निदेव ! अभीष्ट कामना पूर्तिका लागि ज्ञानवान् एवं अनुकूल स्वभाव भएका हितैषिको खोजी गर्ने विचारमा हामी छौं। तिमीहरू र हाम्रा बीचमा विचारको कुनै भिन्नता छैन। त्यसैले तिमीहरूको सामर्थ्य, शक्ति, प्रभाव र क्षमता वर्णन गर्ने स्तोत्र हामी रचना गर्दछौं।

अश्रवं हि भूरिदावत्तरा वां विजामातुरुत वा घा स्यालात्।
अथा सोमस्य प्रयती युवभ्यामिन्द्राग्नी स्तोमं जनयामि नव्यम् ॥२॥

हे इन्द्र र अग्निदेव ! ससुरा र सालाभन्दा बढी दान दिन तिमीहरू सक्छौ भन्ने हामीलाई थाहा छ। त्यसैले तिमीहरू दुवैका लागि सोमरस कोसेली चढाउँदै नयाँ स्तोत्र रच्दछौं।

मा च्छेद्म रश्मीँरिति नाधमानाः पितॄणां शक्तीरनुयच्छमानाः।
इन्द्राग्निभ्यां कं वृषणो मदन्ति ता ह्यद्री धिषणाया उपस्थे ॥३॥

हे इन्द्र र अग्निदेव ! हाम्रा घरका सन्तानरूपी ज्योति ननिभाइदेओ। पुर्खाको शक्ति वंशानुगत रहोस् भन्ने प्रार्थना गर्दछौं। हामीमाथि कृपादृष्टि राख र हामीलाई सुखशान्ति प्राप्ति होस्। देवताहरूलाई सोमरस चढाउनका लागि दुई ढुङ्गा सोमपात्रका नजिकै तयार पारेर राखिएका रहून्।

युवाभ्यां देवी धिषणा मदायेन्द्राग्नी सोममुशती सुनोति।
तावश्विना भद्रहस्ता सुपाणी आ धावतं मधुना पृङ्क्तमप्सु ॥४॥

हे इन्द्र र अग्निदेव ! तिमीहरूको प्रसन्नताका लागि सोमरस पेलेर दिव्य सोमपात्रमा पूर्ण रूपले

भरिएको छ। हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै शीघ्र आएर उत्तम कल्याणकारी हातले यो सोमरस जलमा मिसाओ।

**युवामिन्द्राग्नी वसुनो विभागे तवस्तमा शुश्रव वृत्रहत्ये।**
**तावासद्या बर्हिषि यज्ञे अस्मिन्प्र चर्षणी मादयेथां सुतस्य ॥५॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरू दुवै धन बाँड्दा र वृत्र मार्दाखेरि अत्यन्त फुर्तिला देखिन्छौ भन्ने हामीले सुनेका छौं। हे स्फुर्तिवान् देवताहरू हो ! यस यज्ञस्थलमा श्रेष्ठ आसनमा विराजमान भएर तिमीहरू दुवैले सोमरस पानको आनन्द प्राप्त गर।

**प्र चर्षणिभ्यः पृतनाहवेषु प्र पृथिव्या रिरिचाथे दिवश्च।**
**प्र सिन्धुभ्यः प्र गिरिभ्यो महित्वा प्रेन्द्राग्नी विश्वा भुवनात्यन्या ॥६॥**

हे इन्द्र र अग्निदेव ! युद्धका लागि बोलाइएका अरू वीरहरूका तुलनामा तिमीहरू बढी शक्तिशाली छौ। पृथ्वी, दिव्यलोक, पर्वत र अरू सबै लोकभन्दा पनि तिमीहरू दुईका क्षमताको प्रभाव धेरै छ।

**आ भरतं शिक्षतं वज्रबाहू अस्माँ इन्द्राग्नी अवतं शचीभिः।**
**इमे नु ते रश्मयः सूर्यस्य येभिः सपित्वं पितरो न आसन् ॥७॥**

वज्रभैं बलिया पाखुरा हुने हे इन्द्र र अग्निदेव ! हाम्रो घर धनले भरिपूर्ण गराओ। हामीलाई शिक्षित गराओ र आफ्ना बलले सुरक्षा गर। यी हाम्रा पुर्खालाई पनि उपलब्ध भएका तिनै सूर्यका रश्मि हुन्।

**पुरंदरा शिक्षतं वज्रहस्तास्माँ इन्द्राग्नी अवतं भरेषु।**
**तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥८॥**

वज्रले सुशोभित हात भएका र शत्रुको किल्ला ध्वस्त पार्ने हे इन्द्र र अग्निदेव ! युद्ध आदि सबै विद्यामा कुशल बनाओ र सङ्ग्राममा हामीलाई संरक्षण गर। मित्र, वरुण, अदिति, सिन्धु, पृथ्वी र द्युलोक यी सबै हाम्रो कामना पूर्ति गर्न सहयोगी होऊन्।

## [सूक्त – ११०]

**ऋषि** – कुत्स आङ्गिरस। **देवता** – ऋभुगण। **छन्द** – जगती त्रिष्टुप्।

**ततं मे अपस्तदु तायते पुनः स्वादिष्ठा धीतिरुचथाय शस्यते।**
**अयं समुद्र इह विश्वदेव्यः स्वाहाकृतस्य समु तृष्णुत ऋभवः ॥१॥**

हे ऋभुदेव हो ! हामीले उहिले जस्तो पूजा गरेका थियौं त्यसरी नै फेरि गर्छौं। मधुर स्तुतिले देवताको गुणगान गर्दछौं। समुद्रभैं विस्तृत गुण भएको सोमरस सबै देवताका लागि यहाँ तयार छ। स्वाहासँग यो ग्रहण गरेर तिमीहरू सन्तुष्ट होओ।

**आभोगयं प्र यदिच्छन्त ऐतनापाकाः प्राञ्चो मम के चिदापयः।**
**सौधन्वनासश्चरितस्य भूमनागच्छत सवितुर्दाशुषो गृहम् ॥२॥**

हे सुधन्वाका पुत्रहरू हो ! उहिलेका हाम्रा पुर्खाको जस्तै तिमीहरूको आदर्श छ। तिमीहरू सुखभोगका निम्ति अगाडि सर्‍यौ। त्यस बेला आफ्नो निर्मल चरित्रका कारण उदार र दानी बनेका सवितादेवका आश्रयमा तिमीहरू पुग्यौ।

**तत्सविता वोऽमृतत्वमासुवदगोह्यं यच्छ्रवयन्त ऐतन।**
**त्यं चिच्चमसमसुरस्य भक्षणमेकं सन्तमकृणुता चतुर्वयम् ॥३॥**

हे ऋभुदेव हो ! सवितादेवको कहिल्यै नहराउने खालको कीर्ति गाउँदै तिमीहरू उनका नजिक गएका बेला उनले तिमीहरूलाई अमरता प्रदान गरे। त्वष्टाले बनाएको चमस तिमीहरूले चार किसिमको बनाइदियौ।

**विष्ट्वी शमी तरणित्वेन वाघतो मर्तासः सन्तो अमृतत्वमानशुः।**
**सौधन्वना ऋभवः सूरचक्षसः संवत्सरे समपृच्यन्त धीतिभिः ॥४॥**

मरणशील मानिसले निरन्तर उपासना गर्दै कर्मयोगी बनेर अमरताको कीर्ति प्राप्त गरे। सुधन्वाका पुत्र ऋभु सूर्यदेवजस्तै तेजसम्पन्न भए। उनी एकै वर्षभित्रै सबैबाट प्रशंसित स्तोत्रले पूज्य भए।

क्षेत्रमिव वि ममुस्तेजनेनँ एकं पात्रमृभवो जेहमानम्।
उपस्तुता उपमं नाधमाना अमर्त्येषु श्रव इच्छमानाः ॥५॥

प्रशंसित ऋभुहरूले देवताको अमर कीर्तिजस्तै यश प्राप्त गर्ने इच्छा गरे। उनीहरूले बारम्बार धारिलो हतियारले खेत तयार गरेझैं बारम्बार तेजस्वी सङ्कल्प गरे। यसो गर्दा नै उनीहरूको व्यक्ति देवताकै जस्तो रूपमा विकसित भयो।

आ मनीषामन्तरिक्षस्य नृभ्यः स्रुचेव घृतं जुहवाम विद्मना।
तरणित्वा ये पितुरस्य सश्चिर ऋभवो वाजमरुहन्दिवो रजः ॥६॥

ऋभुहरू मानिसकै रूपमा भए पनि अन्तरिक्षमा विचरण गर्न सक्दछन्। हामी मन लगाएर उनीहरूलाई प्रार्थना गरौं र चमस पात्रले घिउको आहुति दिऔं। ऋभुदेव आफ्ना पितासित निरन्तर क्रियाशील रहन्छन् र दिव्यलोक तथा अन्तरिक्ष लोकबाट अन्न उत्पादन गर्नमा समर्थ छन्।

ऋभुर्न इन्द्र शवसा नवीयानृभुर्वाजेभिर्वसुभिर्वसुर्ददिः।
युष्माकं देवा अवसाहनि प्रियेऽभि तिष्ठेम पृत्सुतीरसुन्वताम् ॥७॥

सामर्थ्यशाली भएकाले ऋभुहरू सधैं युवकजस्तै देखिन्छन् र इन्द्रदेवझैं सम्पन्न छन्। शक्ति र सम्पदाले युक्त ऋभुहरूले हामीलाई ऐश्वर्य प्रदान गर्दछन्। हे देवताहरू हो ! हामी तिमीहरूका स्मरणीय साधनले संरक्षित छौं। शुभ समयमा यज्ञकर्म बिना पनि शत्रुमाथि विजय प्राप्त गर्न सकौं।

निश्चर्मण ऋभवो गामपिंशत सं वत्सेना सृजता मातरं पुनः।
सौधन्वनासः स्वपस्यया नरो जिव्री युवाना पितराकृणोतन ॥८॥

हे ऋभुदेव हो ! हाडछाला मात्र बाँकी रहेका दुब्ला गाईलाई पनि तिमीहरूले राम्रा र बलिया बनायौ। गाईका माउ र बाछा सँगै बनायौ। हे सुधन्वाका वीर पुत्रहरू हो ! तिमीहरूले आफ्ना सत्प्रयासबाट वृद्ध मातापितालाई पनि युवा बनायौ।

वाजेभिर्नो वाजसातावविड्ढ्यृभुमाँ इन्द्र चित्रमा दर्षि राधः।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥९॥

हे ऋभुहरूसँग रहेका इन्द्रदेव ! बलपूर्वक पराक्रम गरिने समरक्षेत्रमा आफ्ना बलिया साधन लिएर तिमी प्रवेश गर। युद्धबाट प्राप्त अद्‌भुत सम्पदा हामीलाई प्रदान गर। हाम्रो यस्तो प्रिय कामना मित्र, वरुण, अदिति, समुद्र, पृथ्वी, द्युलोक र देवताहरूबाट पनि अनुमोदन होस्।

[सूक्त - १११]

ऋषि - कुत्स आङ्गिरस। देवता - ऋभुगण। छन्द - जगती त्रिष्टुप्।

तक्षन्रथं सुवृतं विद्मनापसस्तक्षन्हरी इन्द्रवाहा वृषण्वसू।
तक्षन्पितृभ्यामृभवो युवद्वयस्तक्षन्वत्साय मातरं सचाभुवम् ॥१॥

कुशल वैज्ञानिक ऋभुदेवहरूले मिहिनेत गरी गतिलो रथ बनाए। इन्द्रदेवका रथ तान्ने घोडा राम्ररी सधाए। वृद्ध आमाबाबुलाई उचित मार्गदर्शन गराए र तरुणको जस्तै उत्साह प्रदान गरे। आमालाई बच्चासित रहने योग्य गराए।

आ नो यज्ञाय तक्षत ऋभुमद्वयः क्रत्वे दक्षाय सुप्रजावतीमिषम्।
यथा क्षयाम सर्ववीरया विशा तन्नः शर्धाय धासथा स्विन्द्रियम् ॥२॥

हे ऋभुदेव हो ! हामीलाई यज्ञरूपी सत्कर्म गर्नका लागि तेज र जीवनशक्ति देओ। उत्तम कर्म गर्न, बल बढाउन र प्रजालाई समृद्ध गर्न हामीलाई पौष्टिक अन्न देओ। सङ्गठित हुनका लागि हामीमा पर्याप्त शारीरिक सामर्थ्य उत्पन्न गराओ।

आ तक्षत सातिमस्मभ्यमृभवः सातिं रथाय सातिमर्वते नरः।
सातिं नो जैत्रीं सं महेत विश्वहा जामिमजामि पृतनासु सक्षणिम् ॥३॥

नेतृत्व गर्ने हे ऋभुदेव हो ! तिमीहरू हाम्रा लागि वैभव, हाम्रा रथका लागि सौन्दर्य र अश्वहरूका लागि बल प्रदान गर। समर क्षेत्रमा हाम्रो विपक्षमा आफन्त वा अपरिचित जोसुकै नजिक आए पनि पराजित गर्न सकौं। हामीलाई विजययोग्य विभूति देओ।

ऋभुक्षणमिन्द्रमा हुव ऊतय ऋभून्वाजान्मरुतः सोमपीतये।
उभा मित्रावरुणा नूनमश्विना ते नो हिन्वन्तु सातये धिये जिषे ॥४॥

हामी आफ्नो सुरक्षाका लागि ऋभुहरूका साथमा रहने इन्द्रदेवलाई आह्वान गर्दछौं। ऋभु, वाज, मरुत्, मित्र, वरुण र दुवै अश्विनीकुमार आदि सबै देवताहरूलाई सोमपान गर्नका लागि हामी आह्वान गर्दछौं। हामीलाई धन, उत्तम बुद्धि र विजय प्राप्तिका लागि उनीहरूले प्रेरित गरुन्।

ऋभुर्भराय सं शिशातु सातिं समर्यजिद्वाजो अस्माँ अविष्टु।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥५॥

ऋभुगणले हामीलाई धनधान्यले परिपूर्ण गरुन्। युद्धमा विजय दिलाउने वाज आदि देवताहरू हाम्रा संरक्षक होऊन्। मित्र, वरुण, अदिति, सिन्धु, पृथ्वी र द्युलोक आदि देवताहरू हाम्रो कामनाका सहायक होऊन्।

[सूक्त - ११२]

**ऋषि** - कुत्स आङ्गिरस। **देवता** - द्यावापृथिवी अश्विनीकुमार। **छन्द** - जगती त्रिष्टुप्।

ईळे द्यावापृथिवी पूर्वचित्तयेऽग्निं घर्मं सुरुचं यामन्निष्टये।
याभिर्भरे कारमंशाय जिन्वथस्ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१॥

द्युलोक, भूलोक र व्यवस्थित रूपमा प्रदीप्त तापयुक्त अग्निलाई हामी सर्वप्रथम प्रार्थना गर्दछौं। हे अश्विनीकुरमार हो ! कर्मशील व्यक्तिहरूलाई आफ्नो भाग ग्रहण गर्नका लागि युद्धका क्षेत्रमा तिमीहरू संरक्षण साधनले मार्गदर्शन गराउँछौ। तिमीहरू दुवै तिनै संरक्षण साधन लिएर यहाँ आओ।

युवोर्दानाय सुभरा असश्चतो रथमा तस्थुर्वचसं न मन्तवे।
याभिर्धियोऽवथः कर्मन्निष्टये ताभिरू षु ऊतिभिरश्विना गतम् ॥२॥

हे अश्विनीकुमार हो ! पालनपोषण प्राप्त गर्ने इच्छा भएको व्यक्ति अरूतिर नभौंतारिई जसरी सोझै सज्जन व्यक्ति भएका ठाउँमा जान्छ, त्यसै गरी दान ग्रहण गर्नका लागि साधकहरू सोझै तिमीहरूका रथका नजिकै आउँछन्। लक्ष्यमा पुग्न खोज्ने साधकको बुद्धि र कर्मलाई प्रेरित गर्ने संरक्षण साधन लिएर तिमीहरू दुवै यहाँ आओ।

युवं तासां दिव्यस्य प्रशासने विशां क्षयथो अमृतस्य मज्मना।
याभिर्धेनुमस्वं पिन्वथो नरा ताभिरू षु ऊतिभिरश्विना गतम् ॥३॥

हे नेतृत्व गुणसम्पन्न अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै दिव्यलोकमा उत्पन्न भएको सोमरस पान गरेर अमर र बलशाली बनेका छौ। उसै बलले यो सबै लोकमा शासन गर्दै छौ। जुन संरक्षण तथा चिकित्सा विधिले नब्याउने गाईहरूलाई ब्याउने, बलिया र दुधालु बनायौ तिनै संरक्षण साधन लिएर तिमीहरू दुवै यहाँ आओ।

याभिः परिज्मा तनयस्य मज्मना द्विमाता तूर्षु तरणिर्विभूषति।
याभिस्त्रिमन्तुरभवद्विचक्षणस्ताभिरू षु ऊतिभिरश्विना गतम् ॥४॥

सर्वत्र विचरणशील वायु र अग्निदेव दुई माताका बलले उत्पन्न भएर अत्यन्त गतिशील रूपमा विशेष शोभायमान हुन्छन्। कक्षीवान् ऋषि तीन साधनरूपी यज्ञबाट विशिष्ट ज्ञानवान् बने। हे अश्विनीकुमार हो ! तिनै बल तथा संरक्षण साधन लिएर तिमीहरू दुवै यहाँ आओ।

याभी रेभं निवृतं सितमद्भ्य उद्वन्दनमैरयतं स्वर्दृशे।
याभिः कण्वं प्र सिषासन्तमावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥५॥

हे अश्विनीकुमारहरू हो ! आफ्ना सामर्थ्यले तिमीहरूले जलमा पुगेर डुबेका र बन्धनमा परेका रेभ एवं वन्द नामका ऋषिहरूलाई बाहिर निकाल्यौ र प्रकाशलाई दर्शनयोग्य गरायौ। तिमीहरूले नै साधना गर्नमा लागेका कण्वलाई संरक्षण साधनबाट उचित रीतिले समर्थ बनायौ। तिनै संरक्षण साधन लिएर तिमीहरू दुवै यहाँ आओ।

याभिरन्तकं जसमानमारणे भुज्युं याभिरव्यथिभिर्जिजिन्वथुः।
याभिः कर्कन्धुं वय्यं च जिन्वथस्ताभिरू षु ऊतिभिरश्विना गतम् ॥६॥

हे अश्विनीकुमार हो ! आफ्ना सामर्थ्यले तिमीहरू दुईले गहिरो कूपमा खसेर पीडित भएका राजर्षि अन्तकलाई बाहिर निकाल्यौ। तिमीहरूले कडा मिहिनेतले तुग्रका पुत्र भुज्युलाई जोगायौ र कर्कन्धु

तथा वध्यलाई पनि आफ्ना संरक्षण साधनले रक्षा गऱ्यौ। तिनै संरक्षण साधन लिएर तिमीहरू दुवै यहाँ आओ।

याभिः शुचन्तिं धनसां सुषंसदं तप्तं घर्ममोम्यावन्तमत्रये।
याभिः पृश्निगुं पुरुकुत्समावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥७॥

हे अश्विनीकुमार हो ! आफ्ना सामर्थ्यले तिमीहरूले धन वितरक शुचन्तिलाई निवासका लागि उत्तम स्थान दियौ, तातो वन्दीगृहमा परेका अत्रि ऋषिलाई शीतलता दियौ र पृश्निगु एवं पुरुकुत्सलाई सुरक्षित गरायौ। तिनै संरक्षण साधन लिएर तिमीहरू दुवै यहाँ आओ।

याभिः शचीभिर्वृषणा परावृजं प्रान्धं श्रोणं चक्षस एतवे कृथः।
याभिर्वर्तिकां ग्रसितामुञ्चतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥८॥

हे अश्विनीकुमार हो ! आफ्ना सामर्थ्यले तिमीहरू दुईले अपाङ्ग परावृक् ऋषिलाई स्वस्थ बनायौ, नेत्रहीन ऋज्राश्वलाई देख्न सक्ने बनाइदियौ र लङ्गडा श्रोणलाई हिँड्न सक्ने गरायौ। ब्वाँसाले मुखमा पक्रेको, दाँतले टोकेका चरालाई आफ्नै सामर्थ्यले मुक्त र स्वस्थ पाऱ्यौ। तिनै आरोग्य प्रदायक साधन लिएर तिमीहरू दुवै यहाँ आओ।

याभिः सिन्धुं मधुमन्तमसश्चतं वसिष्ठं याभिरजरावजिन्वतम्।
याभिः कुत्सं श्रुतर्यं नर्यमावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥९॥

हे चिरयुवा अश्विनीकुमार हो ! तिमीहरू दुवैले आफ्ना सामर्थ्यले मिठो जलरूपी रस भएका नदी बगायौ। वसिष्ठ, कुत्स, श्रुतर्य र नर्यलाई शत्रुबाट जोगायौ। तिनै संरक्षण साधन लिएर तिमीहरू दुवै हामीकहाँ आओ।

याभिर्विश्पलां धनसामथर्व्यं सहस्रमीळ्ह आजावजिन्वतम्।
याभिर्वशमश्व्यं प्रेणिमावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१०॥

हे अश्विनीकुमार हो ! आफ्ना सामर्थ्यले तिमीहरू दुईले हजारौं योद्धा भएका शत्रुसित लडाइँ गरिरहेको अवस्थामा युद्धक्षेत्रमा अथर्व वंशमा उत्पन्न धनदात्री विश्पलालाई सहयोग गऱ्यौ। त्यसै गरी प्रेरणाप्रद, अश्वराजका पुत्र वश ऋषिलाई संरक्षित गऱ्यौ। उही संरक्षण सामर्थ्यले युक्त भएर तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिः सुदानू औशिजाय वणिजे दीर्घश्रवसे मधु कोशो अक्षरत्।
कक्षीवन्तं स्तोतारं याभिरावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥११॥

हे श्रेष्ठ दानदाता अश्विनीकुमार हो ! आफ्ना सामर्थ्यले तिमीहरूले उशिकका पुत्र दीर्घश्रवा नामका व्यापारीलाई मधुको भण्डार दियौ। स्तोत्र रचना गर्ने कक्षीवान्लाई सुरक्षित गरायौ। तिनै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभी रसां क्षोदसोद्नः पिपिन्वथुरनश्वं याभी रथमावतं जिषे।
याभिस्त्रिशोक उस्रिया उदाजत ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१२॥

हे अश्विनीकुमार हो ! आफ्ना सामर्थ्यले तिमीहरूले नदीलाई जलले भरपूर बनायौ। अश्वविनाको रथ पनि तेजगतिले चलायौ र त्यसै रथले शत्रुमाथि विजय प्राप्त गऱ्यौ। कण्वका पुत्र त्रिशोकका लागि दुधालु गाई त्यसै शक्तिले प्रदान गऱ्यौ। त्यसै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिः सूर्यं परियाथः परावति मन्धातारं क्षैत्रपत्येष्वावतम्।
याभिर्विप्रं प्र भरद्वाजमावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१३॥

हे अश्विनीकुमार हो ! आफ्ना सामर्थ्यले तिमीहरू दुवै टाढा रहेका सूर्यदेवका चारैतिर परिक्रमा गर्दछौ। तिमीहरू दुवैले जसरी मान्धाताका क्षेत्रपतिलाई कर्तव्य निर्वाह गर्ने सामर्थ्य प्रदान गऱ्यौ र ज्ञानसम्पन्न भरद्वाजलाई जुन श्रेष्ठ साधनले बचायौ उसै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिर्महामतिथिग्वं कशोजुवं दिवोदासं शम्बरहत्य आवतम्।
याभिः पूर्भिद्ये त्रसदस्युमावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१४॥

हे अश्विनीकुमार हो ! सङ्ग्राममा जुन सामर्थ्यले शम्बरको वध गरेर अतिथिग्व, कशोजुव र दिवोदासलाई रक्षा गऱ्यौ, शत्रुको नगर ध्वस्त गर्ने युद्धमा त्रसदस्युलाई संरक्षित गरायौ, उसै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिर्वम्रं विपिपानमुपस्तुतं कलिं याभिर्वित्तजानिं दुवस्यथः ।
याभिर्व्यश्वमुत पृथिमावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१५॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुई सोमरस पान गर्दछौ। आफ्नै सामर्थ्यले आफन्तबाट प्रशंसनीय छौ। तिमीहरूले वम्र ऋषिलाई सुरक्षित गरायौ। धर्मपत्नीसहितका कलि नाम भएका ऋषिलाई आफ्नै शक्तिले संरक्षण गरायौ र अश्वरहित पृथिलाई संरक्षित गर्‍यौ। उसै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिर्नरा शयवे याभिरत्रये याभिः पुरा मनवे गातुमीषथुः ।
याभिः शारीराजतं स्यूमरश्मये ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१६॥

हे नेतृत्व गर्ने क्षमता भएका अश्विनीकुमार हो ! आफ्ना सामर्थ्यले तिमीहरू दुईले शयुलाई सहयोग गरेका थियौ। अत्रि ऋषिलाई कारागारबाट मुक्त गरेका थियौ र मनुलाई दुःखबाट मुक्त गर्न उहिल्यै मार्गदर्शन गरेका थियौ। त्यसै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिः पठर्वा जठरस्य मज्मनाग्निर्नादीदेच्चित इद्धो अज्मन्ना ।
याभिः शर्यातमवथो महाधने ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१७॥

हे अश्विनीकुमार हो ! पठर्वा राजा युद्धमा आफ्ना शारीरिक शक्तिले अति तेजस्वी बनेका थिए। उनी समिधाले प्रदीप्त तेजयुक्त अग्निजस्ता देखिन्थे। उनले त्यो तेज तिमीहरूकै संरक्षण साधनले पाएका थिए। तिमीहरू दुईले विशाल सम्पदा अर्जित गरेका छौ। तिमीहरूले सङ्ग्राममा शर्यातलाई संरक्षित गरेका थियौ। तिनै संरक्षण साधन लिएर तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिरङ्गिरो मनसा निरण्यथोऽग्रं गच्छथो विवरे गोअर्णसः ।
याभिर्मनुं शूरमिषा समावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१८॥

हे अश्विनीकुमार हो ! आङ्गिरसहरूले श्रद्धापूर्वक तिमीहरू दुईलाई स्तुति गरे। त्यस बेला उनीहरूलाई सन्तुष्ट गरायौ। चोरिएका गाईको बथान प्राप्त गर्नका लागि गुफाका मुखमा तिमीहरू दुई पुग्यौ। शूरवीर मनुलाई प्रशस्त अन्न सामग्री दिएर युद्धमा सुरक्षित गरायौ। जुन सामर्थ्यले तिमीहरू यस्ता काम गर्दछौ, त्यो संरक्षण सामर्थ्य लिएर हामीकहाँ अवश्य आओ।

याभिः पत्नीर्विमदाय न्यूहथुरा घ वा याभिररुणीरशिक्षतम् ।
याभिः सुदास ऊहथुः सुदेव्यं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥१९॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुईले विमदका धर्मपत्नीहरूलाई उनीहरूका घरमा पुर्‍यायौ। रातो रङ्गका घोडाहरूलाई सधायौ र पिजवनका पुत्र सुदासलाई दिव्य सम्पदा प्रदान गर्‍यौ। तिनै प्रेरणास्पद सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिः शंताती भवथो ददाशुषे भुज्युं याभिरवथो याभिरध्रिगुम् ।
ओम्यावतीं शुभरामृतस्तुभं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥२०॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुई मानिसहरूका लागि सुखदायक बन्यौ। भुज्यु र अध्रिगुलाई तिमीहरूले संरक्षित गर्‍यौ र ऋतस्तुभलाई उत्तम पौष्टिक र आनन्ददायक अन्न सामग्री प्रदान गर्‍यौ। तिनै सुखदायक सामर्थ्यले सम्पन्न भएर तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिः कृशानुमसने दुवस्यथो जवे याभिर्यूनो अर्वन्तमावतम् ।
मधु प्रियं भरथो यत्सरड्भ्यस्ताभिरू षु ऊतिभिरश्विना गतम् ॥२१॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुईले कृशानुलाई युद्धमा सहयोग गर्‍यौ। नवयुवक पुरुकुत्सका गतिशील अश्वलाई संरक्षित गरायौ र माहुरीका लागि मिठो मह उत्पन्न गराइदियौ। तिनै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिर्नरं गोषुयुधं नृषाह्ये क्षेत्रस्य साता तनयस्य जिन्वथः ।
याभी रथाँ अवथो याभिरर्वतस्ताभिरू षु ऊतिभिरश्विना गतम् ॥२२॥

हे अश्विनीकुमार हो ! तिमीहरू सङ्घर्षशील योद्धाजस्ता गोठाला र कृषि उत्पादन वितरण गर्ने किसानहरूलाई आन्तरिक कलहबाट जोगाउँछौ। वीरका रथ र अश्वको सुरक्षा गर्दछौ। तिनै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

याभिः कुत्समार्जुनेयं शतक्रतू प्र तुर्वीतिं प्र च दभीतिमावतम्।
याभिर्ध्वसन्तिं पुरुषन्तिमावतं ताभिरू षु ऊतिभिरश्विना गतम् ॥२३॥

सयौं यज्ञ आदि श्रेष्ठ कर्महरू सम्पन्न गराउने हे अश्विनीकुमार हो ! तिमीहरू दुईले अर्जुनका पुत्र कुत्स, तुर्वीतिलाई संरक्षण प्रदान गऱ्यौ। उसै गरी दधीतिलाई, ध्वसन्ति र पुरुषन्ति ऋषिलाई संरक्षण प्रदान गऱ्यौ। तिनै संरक्षण सामर्थ्यका साथ तिमीहरू हामीकहाँ अवश्य आओ।

अप्नस्वतीमश्विना वाचमस्मे कृतं नो दस्रा वृषणा मनीषाम्।
अद्यूत्येऽवसे नि ह्वये वां वृधे च नो भवतं वाजसातौ ॥२४॥

हे दर्शनयोग्य शक्तिसम्पन्न अश्विनीकुमार हो ! तिमीहरू दुवैले हाम्रो बोली र बुद्धि सत्कर्ममा प्रेरित गर। सन्मार्गबाट उपलब्ध हुने अन्नका लागि हामी याजक तिमीहरू दुईलाई आह्वान गर्दछौं। तिमीहरू दुवै हाम्रो यज्ञ र हाम्रो पनि वृद्धि गराओ।

द्युभिरक्तुभिः परि पातमस्मानरिष्टेभिरश्विना सौभगेभिः।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥२५॥

हे अश्विनीकुमार हो ! दिनरात निरन्तर उत्तम धनले हामीलाई सबै किसिमबाट संरक्षित गर। मित्र, वरुण, अदिति, सिन्धु र द्युलोक यी सबै तिमीहरूले हामीलाई दिएको धन सुरक्षा गर्न सहायक बनून्।

## [सूक्त - ११३]

ऋषि - कुत्स आङ्गिरस। देवता - उषा रात्रि। छन्द - त्रिष्टुप्।

इदं श्रेष्ठं ज्योतिषां ज्योतिरागाच्चित्रः प्रकेतो अजनिष्ट विभ्वा।
यथा प्रसूता सवितुः सवायँ एवा रात्र्युषसे योनिमारैक् ॥१॥

दीप्तिमान् पदार्थहरूमा उषादेवी नै सर्वाधिक तेजयुक्त छन्। यिनका विलक्षण प्रकाश चारैतिर व्याप्त भएर सबै पदार्थमा पुगेको छ। सूर्यदेव अस्ताएर रात्रि उत्पन्न हुनका लागि देवी उषाले ठाउँ छोडिदिन्छ।

रुशद्वत्सा रुशती श्वेत्यागादारैगु कृष्णा सदनान्यस्याः।
समानबन्धू अमृते अनूची द्यावा वर्णं चरत आमिनाने ॥२॥

तेजस्वी उषादेवीले उज्यालो पुत्र लिएर प्रकट भइन् र काला रङ्गकी रात्रिदेवीले उनलाई स्थान दिइन्। देवी उषा र रात्रि दुवैको सूर्यदेवसित एकसमान मित्रताको भाव छ। दुवै अविनाशी छन् र एकपछि अर्को गर्दै आकाशमा क्रमशः विचरण गर्दछन्। यिनीहरू एकले अर्काको प्रभाव नष्ट गराउँछन्।

समानो अध्वा स्वस्रोरनन्तस्तमन्यान्या चरतो देवशिष्टे।
न मेथेते न तस्थतुः सुमेके नक्तोषासा समनसा विरूपे ॥३॥

रात्रि र उषादेवी अन्तहीन दिदीबहिनी एउटै मार्गमा छन्। त्यस मार्गबाट देवी उषा र रात्रि प्रकाशित सूर्यका अनुगामी भएर एकपछि अर्को हिँड्छन्। उत्तम कार्य गर्ने यी दुई परस्पर विपरीत हुँदा पनि उस्तै रमाइला छन्। आपसमा बाधाविरोध नगरीकन निरन्तर नरोकिई आआफ्ना काममा संलग्न रहन्छन्।

भास्वती नेत्री सूनृतानामचेति चित्रा वि दुरो न आवः।
प्रार्प्या जगद्व्यु नो रायो अख्यदुषा अजीगर्भुवनानि विश्वा ॥४॥

आफ्ना प्रकाशले दुनियाँलाई असल काममा प्रेरित गराउने दीप्तिसम्पन्न उषादेवीको उदय भएको छ। उषाका अद्भुत किरणले ढोका खोल्ने प्रेरणा दिन्छन्। विश्वमा उज्यालो छरिएपछि मानिसहरूमा ऐश्वर्य प्राप्तिको प्रेरणा जाग्दछ र उषाका किरणले सम्पूर्ण लोक नै प्रकाशित हुन्छ।

जिह्मश्ये३चरितवे मघोन्याभोगय इष्टये राय उ त्वं।
दभ्रं पश्यद्भ्य उर्विया विचक्ष उषा अजीगर्भुवनानि विश्वा ॥५॥

धनकी स्वामिनी उषादेवी सुषुप्तलाई जगाएर हिँड्न, ऐश्वर्य उपभोग गर्न र रुचाएको काम गर्न प्रेरित गर्छिन्। अन्धकारमा भौंतारिएकाहरूलाई दृष्टि दिएर तेजलाई व्यापक गर्ने उषादेवी सम्पूर्ण लोकलाई प्रकाशित गर्छिन्।

क्षत्राय त्वं श्रवसे त्वं महीया इष्टये त्वमर्थमिव त्वमित्यै।
विसदृशा जीविताभिप्रचक्ष उषा अजीगर्भुवनानि विश्वा ॥६॥

हे तेजस्विनी उषादेवी ! रक्षायोग्य कर्म गर्न, श्रेयस्कर कर्म गर्न, महायज्ञ पूरा गर्न, प्रचुर धन आर्जन गर्न र जीवनका विभिन्न उपयोगी कर्म पूरा गर्नका लागि सम्पूर्ण संसारलाई तिमी जगाउँछ्यौ।

एषा दिवो दुहिता प्रत्यदर्शि व्युच्छन्ती युवतिः शुक्रवासाः।
विश्वस्येशाना पार्थिवस्य वस्व उषो अद्येह सुभगे व्युच्छ ॥७॥

स्वर्गपुत्री उषादेवी अन्धकार हटाउँदै उदाएकी छिन्। नवयुवतीभैँ शुभ्र वस्त्र धारण गरेकी उषादेवी संसारभरिका सम्पत्तिकी अधिपति हुन्। हे सौभाग्यदायिनी उषादेवी ! तिमी आफ्नो आलोक यहाँ पनि प्रकट गर।

परायतीनामन्वेति पाथ आयतीनां प्रथमा शश्वतीनाम्।
व्युच्छन्ती जीवमुदीरयन्त्युषा मृतं कं चन बोधयन्ती ॥८॥

उषादेवी विगतका उषाको मार्ग अनुसरण गर्दै छिन्। यिनी भविष्यको अनन्त कालसम्म उदाउने अनेकौँ उषाहरूमध्ये प्रमुख हुन्। यी प्रकाशमयी उषादेवी जीवितहरूमा प्रेरणा जगाउँछिन् र मृतकसरह सुतेकाहरूमा प्राणतत्त्वको सञ्चार गराउँछिन्।

उषो यदग्निं समिधे चकर्थ वि यदावश्चक्षसा सूर्यस्य।
यन्मानुषान्यक्षयमाणाँ अजीगस्तद्देवेषु चकृषे भद्रमप्नः ॥९॥

हे उषादेवी ! तिम्रो उदाउनासाथ यज्ञकर्म सम्पन्न गर्नेहरू जागेर अग्नि प्रदीप्त गर्न लागे। सूर्योदयभन्दा पहिले तिमीले नै प्रकाश फिँजायौ। विश्वका लागि कल्याणकारी र देवताहरूका लागि प्रिय उपासना आदि सत्कर्म गर्ने प्रेरणा तिमीले नै प्रदान गर्‍यौ।

कियात्या यत्समया भवाति या व्यूषुर्याश्च नूनं व्युच्छान्।
अनु पूर्वाः कृपते वावशाना प्रदीध्याना जोषमन्याभिरेति ॥१०॥

उषादेवी कतिन्जेल रहन्छिन् ? जति पहिले प्रकाशित भइसके र जति पछि आउनेछन्, तिनीहरू पनि लामो समयसम्म कसरी रहन्छन् र ? पहिले आइसकेका उषाहरूको सम्झना गराउँदै वर्तमानकी उषा प्रकाश फिँजाउन सक्षम छन्। प्रकाश फिँजाउने उषादेवी अन्य उषाहरूकै अनुसरण गर्दछिन्।

ईयुष्टे ये पूर्वतरामपश्यन्व्युच्छन्तीमुषसं मर्त्यासः।
अस्माभिरू नु प्रतिचक्ष्याभूदो ते यन्ति ये अपरीषु पश्यान् ॥११॥

विगतमा उषालाई देख्नेहरू बितिसके, आज देखिरहेकाहरू पनि जानेछन् र भविष्यमा उषाको दर्शन गर्नेहरू पनि स्थायी हुँदैनन्, उषादेवी बारम्बार आउने स्थायी हुन्।

यावयद्द्वेषा ऋतपा ऋतेजाः सुम्नावरी सूनृता ईरयन्ती।
सुमङ्गलीर्बिभ्रती देववीतिमिहाद्योषः श्रेष्ठतमा व्युच्छ ॥१२॥

उषादेवी अज्ञानान्धकार रूपी शत्रुको विनाश गर्छिन्। उनी सत्यको प्रचार गर्नका लागि प्रकट हुन्छिन् र सत्यको पालन गर्दछिन्। उषाले नै सुखप्रद वाणीलाई प्रेरणा दिन्छिन् र श्रेष्ठ कल्याणकारी, देवताहरूलाई सन्तुष्ट गराउने यज्ञीय कर्ममा प्रेरणा दिन्छिन्। हे उत्तम गुणसम्पन्न उषादेवी ! तिमी यहाँ प्रकाशित भइदेऊ।

शश्वत्पुरोषा व्युवास देव्यथो अद्येदं व्यावो मघोनी।
अथो व्युच्छादुत्तराँ अनु द्यूनजरामृता चरति स्वधाभिः ॥१३॥

उषादेवी विगतमा प्रकाशित थिइन्। धनकी स्वामिनी उषादेवी आज यस विश्वलाई प्रकाशित गरिरहेकी छिन् र भविष्यमा पनि गर्नेछिन्। तीनै कालमा एकैनास यिनी अजर र अमर छिन्। आफैँले धारण गरेका क्षमताले यी उषादेवी सक्रिय छिन्।

व्यञ्जिभिर्दिव आतास्वद्यौदप कृष्णां निर्णिजं देव्यावः।
प्रबोधयन्त्यरुणेभिरश्वैरोषा याति सुयुजा रथेन ॥१४॥

तेजस्वी रश्मि भएकी दिव्य उषादेवी आकाशका सबै दिशामा प्रकट भएर कालो रङ्ग हटाइन्। किरणरूपी राता अश्वले खिँचेका रथमा उनी आएर सबैलाई जगाउँछिन्।

आवहन्ती पोष्या वार्याणि चित्रं केतुं कृणुते चेकिताना।
ईयुषीणामुपमा शश्वतीनां विभातीनां प्रथमोषा व्यश्वैत् ॥१५॥

पौष्टिक, धारण गर्न योग्य र उपयोगी धन प्रदान गर्ने उषादेवीले सबैलाई प्रकाशित गराइन्। यिनले अद्भुत मनोरम तेज फैलाइन्। वर्तमान उषादेवी विगतका उषाहरूमध्ये अन्तिम र आगत उषाहरूमध्ये प्रथम हुनाले उत्तम रूपले प्रकाशित हुँदै छिन्।

उदीर्ध्वं जीवा असुर्न आगादप प्रागात्तम आ ज्योतिरेति।
आरैक्पन्थां यातवे सूर्यायागन्म यत्र प्रतिरन्त आयुः ॥१६॥

हे मनुष्यहरू ! उठ, आलस्य त्यागेर उन्नतिका मार्गमा अगाडि बढ। बिहान हामीलाई प्राणरूपी जीवनशक्तिको मनग्गे सञ्चार हुन्छ। मोहरूपी अन्धकार हट्छ र ज्योतिर्मान सूर्यदेव अगाडि बढ्दै आउँछन्। उषादेवीले सूर्यदेवका आगमनको मार्ग बनाउँछिन्। हामी सबैले त्यस्तै आयु प्राप्त गरौँ।

स्यूमना वाच उदियर्ति वह्निः स्तवानो रेभ उषसो विभातीः।
अद्या तदुच्छ गृणते मघोन्यस्मे आयुर्नि दिदीहि प्रजावत् ॥१७॥

ज्ञानसम्पन्न साधक दीप्तिमान् उषाको प्रार्थना गर्दै शोभनीय तथा मनोरम स्तोत्र उच्चारण गर्दछन्। हे ऐश्वर्यशाली उषादेवी ! स्तुति गर्नेहरूका हृदयमा तिमी ज्ञानरूपी प्रकाश भरिदेऊ। हाम्रा लागि असल सन्तानले युक्त जीवन र अन्न प्रदान गर।

या गोमतीरुषसः सर्ववीरा व्युच्छन्ति दाशुषे मर्त्याय।
वायोरिव सूनृतानामुदर्के ता अश्वदा अश्नवत्सोमसुत्वा ॥१८॥

हविदाता मनुष्यका लागि उषा सम्पूर्ण शक्तिले युक्त, कान्तिमान् रश्मिले सम्पन्न भएर प्रकाशमान भइरहेकी छिन्। वायुसमान तीव्र गतियुक्त स्तोत्ररूपी सुवचनले प्रशंसित भएर जीवनशक्ति प्रदान गर्ने उषादेवी सोमयज्ञ गर्ने साधकहरूका निकट जान्छिन्।

माता देवानामदितेरनीकं यज्ञस्य केतुर्बृहती विभाहि।
प्रशस्तिकृद् ब्रह्मणे नो व्युच्छा नो जने जनय विश्ववारे ॥१९॥

हे उषादेवी ! तिमी देवत्वको सञ्चार गर्ने देवमाता हौ। तिमी अदितिको मुखझैँ तेजस्वी र यज्ञको ध्वजाझैँ विस्तृत छ्यौ। हे विशेष रूपले प्रकाशित उषादेवी ! तिमी हाम्रा सद्ज्ञानलाई प्रशंसा गर्दै आलोकित होऊ। हे विश्वले प्रशंसा गरिने उषादेवी ! हामीलाई सुमार्गबाट उत्तम लोकमा लैजाऊ।

यच्चित्रमप्न उषसो वहन्तीजानाय शशमानाय भद्रम्।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥२०॥

उषाले जुन आश्चर्यजनक वैभव धारण गर्दछिन्, त्यो यज्ञ निर्वाह गर्ने यजमानका लागि कल्याणकारी होस्। मित्र, वरुण, अदिति, समुद्र, पृथ्वी र दिव्यलोक यी सबै देवत्व स्थापित गराउनेहरूले हाम्रो प्रार्थना सफल गराऊन्।

[सूक्त - ११४]

ऋषि - कुत्स आङ्गिरस। देवता - रुद्र। छन्द - जगती त्रिष्टुप्।

इमा रुद्राय तवसे कपर्दिने क्षयद्वीराय प्र भरामहे मतीः।
यथा शमसद्द्विपदे चतुष्पदे विश्वं पुष्टं ग्रामे अस्मिन्ननातुरम् ॥१॥

हाम्रा प्रजा र गाई आदि पशुलाई सुख होस्। यस गाउँका सबै प्राणीहरू आपद्रहित र बलिया होऊन्। हामी आफ्नो बुद्धि दुष्टहरूलाई नाश गर्ने वीरलाई प्रेरणा दिने जटाधारी रुद्रदेवलाई समर्पित गरौँ।

मृळा नो रुद्रोत नो मयस्कृधि क्षयद्वीराय नमसा विधेम ते।
यच्छं च योश्च मनुरायेजे पिता तदश्याम तव रुद्र प्रणीतिषु ॥२॥

हे रुद्रदेव ! हामी सबैलाई स्वस्थ र निरोगी राख्दै सुख प्रदान गर। तिमी वीरलाई आश्रय प्रदान गर्ने हुनाले तिमीलाई नमस्कार गर्दछौँ। तिमी शान्ति र रोग प्रतिरोधक शक्ति प्रदान गर्दै मानिसलाई पालन गर्दछौ। हे रुद्रदेव ! हामीहरू तिम्रा उत्तम नीतिको अनुसरण गर्दछौँ।

अश्याम ते सुमतिं देवयज्यया क्षयद्वीरस्य तव रुद्र मीढ्वः।
सुम्नायन्निद्विशो अस्माकमा चरारिष्टवीरा जुहवाम ते हविः ॥३॥

हे कल्याणकारी रुद्रदेव ! वीरलाई आश्रय प्रदान गर्ने तिम्रो सद्बुद्धि हामी सबैले आर्जन गरौँ। हाम्रा

सन्तानलाई श्रेष्ठ देवयजन कर्मले सुख देऊ। हाम्रा वीरलाई अनुकूल अक्षय बल प्राप्त होस्। हामी तिम्रा निमित्त आहुति प्रदान गर्दछौं।

**त्वेषं वयं रुद्रं यज्ञसाधं वङ्कुकविमवसे नि ह्वयामहे।**
**आरे अस्मद्दैव्यं हेडो अस्यतु सुमतिमिद्वयमस्या वृणीमहे॥४॥**

तेजसम्पन्न यज्ञका सुकर्म निर्वाह गर्ने स्फुर्तियुक्त, ज्ञानवान् रुद्रदेवलाई हामी सबैले स्तुति गर्दछौं। तिनले हामीलाई संरक्षण प्रदान गरुन्। हामी देवशक्तिका क्रोधको भागी बन्नुको सट्टा कृपा प्राप्त गरौं।

**दिवो वराहमरुषं कपर्दिनं त्वेषं रूपं नमसा नि ह्वयामहे।**
**हस्ते बिभ्रद्भेषजा वार्याणि शर्म वर्म च्छर्दिरस्मभ्यं यंसत्॥५॥**

सात्विक आहार ग्रहण गर्ने, दीप्तियुक्त, सुन्दर रूपवान्, जटाधारी वीरलाई हामी सादर आह्वान गर्छौं। आफ्ना हातमा ग्रहण गरेका आरोग्यप्रदायक औषधीहरू दिव्यलोकबाट अवतरित होऊन्। हामीलाई मानसिक शान्ति र बाहिरी रोग प्रतिरोध गर्ने क्षमता प्रदान गर। हाम्रा शरीरमा रहेको विष बाहिर निकालिदेऊ।

**इदं पित्रे मरुतामुच्यते वचः स्वादोः स्वादीयो रुद्राय वर्धनम्।**
**रास्वा च नो अमृत मर्तभोजनं त्मने तोकाय तनयाय मृड॥६॥**

हामीहरू मरुत्गणका पिता रुद्रदेवका लागि अति मधुर र कीर्तिवर्द्धक स्तोत्र गाउँछौं। हे अमृतस्वरूप रुद्रदेव ! हामी सबैका लागि उपभोग्य सामग्री तिमी प्रदान गर। हामी र हाम्रा सन्तानलाई पनि सुखी राख।

**मा नो महान्तमुत मा नो अर्भकं मा न उक्षन्तमुत मा न उक्षितम्।**
**मा नो वधीः पितरं मोत मातरं मा नः प्रियास्तन्वो रुद्र रीरिषः॥७॥**

हे रुद्रदेव ! हाम्रा ज्ञान र बलसम्पन्न वृद्धलाई नसताऊ। हाम्रा साना बालकलाई हिंसा नगर। हाम्रा बलिष्ठ युवा पुरुषहरूलाई घात नगर। हाम्रा गर्भस्थ शिशुहरूलाई हिंसित नगराऊ र हाम्रा मातापितालाई नाश नगरिदेऊ। हाम्रा आफन्तको शरीर कष्टमा नपार।

**मा नस्तोके तनये मा न आयौ मा नो गोषु मा नो अश्वेषु रीरिषः।**
**वीरान्मा नो रुद्र भामितो वधीर्हविष्मन्तः सदमित्त्वा हवामहे॥८॥**

हे रुद्रदेव ! हाम्रा छोरानाति सन्तानहरू, हाम्रो जीवन, गाई, घोडालाई हानी नपुगोस्। तिमी हाम्रा शूरवीरलाई विनाशका लागि क्रोधित नगराऊ। हविष्यान्न प्रदान गर्ने यज्ञमा हामी तिमीलाई आह्वान गर्दछौं।

**उप ते स्तोमान्पशुपा इवाकरं रास्वा पितर्मरुतां सुम्नमस्मे।**
**भद्रा हि ते सुमतिर्मृडयत्तमाथा वयमव इत्ते वृणीमहे॥९॥**

हे मरुत्गणका पिता रुद्रदेव ! साहुबाट बिहान लिएका पशुहरू गोठालाले बेलुका साहुलाई नै जिम्मा लगाएझैं तिम्रा कृपाले प्राप्त मन्त्र स्तुतिका रूपमा तिमीलाई नै समर्पित गर्दछौं। हामीलाई तिमी सुख प्रदान गर। तिम्रो कल्याणकारी बुद्धि अत्यधिक सुख प्रदायक हुन्छ। त्यसैले हामी सबैले तिम्रा संरक्षणको कामना गरेका छौं।

**आरे ते गोघ्नमुत पूरुषघ्नं क्षयद्वीर सुम्नमस्मे ते अस्तु।**
**मृडा च नो अधि च ब्रूहि देवाधा च नः शर्म यच्छ द्विबर्हाः॥१०॥**

हे वीरलाई आश्रय दिने रुद्रदेव ! पशु र मानिसको संहार गर्ने तिम्रा शस्त्रले हामीलाई कष्ट नपारोस्। हामी सबैलाई तिम्रो श्रेष्ठ प्रेरणा प्राप्त भइरहोस्। हामी सबैलाई सुख प्रदान गर। हे रुद्रदेव ! हामीलाई विशेष मार्गदर्शन गर र दुई किसिमका शक्तिहरूले युक्त तिमी सबैलाई शान्ति प्रदान गर।

**अवोचाम नमो अस्मा अवस्यवः शृणोतु नो हवं रुद्रो मरुत्वान्।**
**तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः॥११॥**

सुरक्षाको कामना गर्ने हामी सबै रुद्रदेवलाई नमस्कार भन्दछौं। मरुत्गणका साथ उनै रुद्रदेवले हाम्रो प्रार्थना सुनून्। यस किसिमको हाम्रो अभीष्ट कामना मित्र, वरुण, अदिति, समुद्र, पृथ्वी र द्युलोक सबैले स्वीकार गरुन्।

[सूक्त - ११५]

ऋषि – कुत्स आङ्गिरस। देवता – सूर्य। छन्द – त्रिष्टुप्।

**चित्रं देवानामुदगादनीकं चक्षुर्मित्रस्य वरुणस्याग्नेः।**
**आप्रा द्यावापृथिवी अन्तरिक्षं सूर्य आत्मा जगतस्तस्थुषश्च ॥१॥**

चराचर जगत्का आत्मारूपी सूर्यदेव दैवी शक्तिको अद्भुत तेजका रूपमा उदाए। मित्र, वरुण आदिका आँखाजस्ता सूर्यदेव उदाउनासाथ द्युलोक, पृथ्वीलोक र अन्तरिक्ष प्रकाशले झलमल्ल भए।

**सूर्यो देवीमुषसं रोचमानां मर्यो न योषामभ्येति पश्चात्।**
**यत्रा नरो देवयन्तो युगानि वितन्वते प्रति भद्राय भद्रम् ॥२॥**

पहिलो दीप्तिकी धनी र तेजयुक्त उषादेवीलाई आइमाईका पछि लाग्ने मानिस लागेझैं सूर्यदेवले पछ्याउँछन्। देवत्व प्राप्तिको उच्च लक्ष्य राखेर साधकले यज्ञ गर्दछन्। त्यसै ठाउँमा साधकका लागि कल्याणकारी यज्ञीय कर्मलाई सूर्यदेवले आफ्नै प्रकाशले प्रकाशित गर्दछन्।

**भद्रा अश्वा हरितः सूर्यस्य चित्रा एतग्वा अनुमाद्यासः।**
**नमस्यन्तो दिव आ पृष्ठमस्थुः परि द्यावापृथिवी यन्ति सद्यः ॥३॥**

सूर्यदेवका अश्वरूपी किरणहरू कल्याणकारी जल सुकाउने, त्यसपछि वर्षा गराउने, आश्चर्यजनक, आनन्ददायी र निरन्तर गतिशील छन्। ती रश्मिहरू नै प्रशंसनीय रूपमा सर्वोच्च दिव्यलोकका पृष्ठमा फिँजिएर द्युलोक र भूलोकमा अतिशीघ्र फिँजिन्छन्।

**तत्सूर्यस्य देवत्वं तन्महित्वं मध्या कर्तोर्विततं सं जभार।**
**यदेदयुक्त हरितः सधस्थादाद्रात्री वासस्तनुते सिमस्मै ॥४॥**

यस्तो सबै काम सूर्यदेवका दैवी शक्तिका कारण भएको हो। सूर्यदेवले आफ्ना गतिशील किरणलाई आकाशबाट छुट्याएर केन्द्रमा समेट्दै धारण गरेपछि रात्रिले यस विश्वमाथि बाक्लो अन्धकारको खोल हालिदिन्छ।

**तन्मित्रस्य वरुणस्याभिचक्षे सूर्यो रूपं कृणुते द्योरुपस्थे।**
**अनन्तमन्यद्रुशदस्य पाजः कृष्णमन्यद्धरितः सं भरन्ति ॥५॥**

द्युलोकका काखमा सूर्यदेवको सबै तिरबाट मानिसले देख्न सक्ने रूप प्रकट हुन्छ। त्यो रूप मित्र र वरुणदेवले प्रकट गराउँछन्। सूर्यको किरणले एकातर्फ अनन्त विश्वमा चेतनारूपी उज्यालो भर्दछ भने अर्कातिर अन्धकार भरिएको हुन्छ।

**अद्या देवा उदिता सूर्यस्य निरंहसः पिपृता निरवद्यात्।**
**तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥६॥**

हे देवता ! तिमीहरू सूर्योदयदेखि नै हामीलाई आपद् र दुष्कर्मरूपी पापबाट संरक्षित गर। हाम्रा यस कामलाई मित्र, वरुण, अदिति, समुद्र, पृथ्वी र दिव्यलोकका सबै देवताले समर्थन गरुन्।

[सूक्त - ११६]

ऋषि – कक्षीवान् दैर्घतमस। देवता – अश्विनीकुमार। छन्द – त्रिष्टुप्।

**नासत्याभ्यां बर्हिरिव प्र वृञ्जे स्तोमाँ इयर्म्यभ्रियेव वातः।**
**यावर्भगाय विमदाय जायां सेनाजुवा न्यूहतू रथेन ॥१॥**

सेनासँग हिँडेका दुवै अश्विनीकुमारले नवयुवक विमदकी धर्मपत्नीलाई रथमा राखेर उनका घरमा छोडेर आएका थिए। सत्यवान् अश्विनीकुमारका निम्ति हामी स्तोत्रले प्रेरित गर्दछौँ। बादलको पानी बर्सनका लागि हावाले प्रेरित गरेझैं हामी यज्ञकर्ताहरू कुशको आसन फिजाउँछौँ।

**वीळुपत्मभिराशुहेमभिर्वा देवानां वा जूतिभिः शाशदाना।**
**तद्रासभो नासत्या सहस्रमाजा यमस्य प्रधने जिगाय ॥२॥**

हे सत्ययुक्त अश्विनीकुमार हो ! तिमीहरू दुवै अति वेगले आकाशमा उड्ने, तीव्र गति भएका, देवताका गतिमा हिँड्ने यानभन्दा पनि तीव्र यात्रा गर्दछौ। तिमीहरूका यानसित सँगै हिँड्ने रासभले यमलाई खुसी गराउने युद्धमा शत्रुको हजारौं सैनिकमाथि विजय प्राप्त गरेको थियो।

तुग्रो ह भुज्युमश्विनोदमेघे रयिं न कश्चिन्ममृवाँ अवाहाः ।
तमूहथुर्नौभिरात्मन्वतीभिरन्तरिक्षप्रुद्भिरपोदकाभिः ॥३॥

मरणासन्न व्यक्तिले धनको मोह त्यागेझैं तुग्र देशका भुज्यु नामका राजाले छोराको माया मारेर छोरालाई अति गहिरो महासागरमा पसेर शत्रुमाथि आक्रमण गर्ने आज्ञा दिए। ती भुज्युलाई तिमीहरू दुईले आफ्नै शक्तिले अन्तरिक्षयान र जलयानका सहायताले निकालेर उनका पितासमक्ष लग्यौ।

तिस्रः क्षपस्त्रिरहातिव्रजद्भिर्नासत्या भुज्युमूहथुः पतङ्गैः ।
समुद्रस्य धन्वन्नार्द्रस्य पारे त्रिभी रथैः शतपद्भिः षडश्वैः ॥४॥

हे सत्यका पक्षधर अश्विनीकुमारहरू हो ! गहिरो सागरभन्दा धेरै टाढाको मरुस्थलबाट तीन दिन तीन रात हिँडेर अति वेगवान्, सय पाङ्ग्रा र छ अश्वशक्तिले चल्ने यन्त्र भएको, पक्षीझैं उडेर आकाशमार्गबाट गयौ। त्यस बेला तीन वटा यानद्वारा तिमीहरूले भुज्युलाई उनका निवासमा पुऱ्यायौ।

अनारम्भणे तदवीरयेथामनास्थाने अग्रभणे समुद्रे ।
यदश्विना ऊहथुर्भुज्युमस्तं शतारित्रां नावमातस्थिवांसम् ॥५॥

हे अश्विनीकुमारहरू हो ! विनाविश्राम, निराश्रय, टेक्नेसमाउने विहीन, अति गहन महासमुद्रबाट तिमीहरू दुईले सय पतवारले चल्ने नौकामा चढाएर भुज्युलाई उनका निवासमा पुऱ्याएका थियौ। यो पक्कै पनि अति दुःसाहसिक र वीरतापूर्ण कार्य थियो।

यमश्विना ददथुः श्वेतमश्वमघाश्वाय शश्वदित्स्वस्ति ।
तद्वां दात्रं महि कीर्तेन्यं भूत्पैद्वो वाजी सदमिद्धव्यो अर्यः ॥६॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले अघाश्व राजालाई प्रदान गरेको सेतो घोडा सधैं मङ्गलकारी छ। यस्तो दान अति प्रशंसनीय हुन्छ। शत्रुदलमाथि आक्रमण गर्ने पेदुका लागि दिइएको कुशल घोडा पनि सधैं प्रशंसनीय छ।

युवं नरा स्तुवते पज्रियाय कक्षीवते अरदतं पुरन्धिम् ।
कारोतराच्छफादश्वस्य वृष्णः शतं कुम्भाँ असिञ्चतं सुरायाः ॥७॥

हे नेतृत्वको क्षमताले सम्पन्न अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैले उच्च कुलमा उत्पन्न स्तोता कक्षीवानलाई नगरको संरक्षण गर्नका लागि उचित परामर्श दियौ। बलशाली अश्वका खुरजस्तो आकृति भएका विशेष पात्रले स्वच्छ जल भरेका सय घडाहरू तिमीहरू दुईले स्थापित गऱ्यौ।

हिमेनाग्निं घ्रंसमवारयेथां पितुमतीमूर्जमस्मा अधत्तं ।
ऋबीसे अत्रिमश्विनावनीतमुन्निन्यथुः सर्वगणं स्वस्ति ॥८॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले प्रचण्ड अग्निदेवलाई हिउँयुक्त शीतल जलले शान्त गरायौ। स्वराज्यका लागि सङ्घर्षरत असुरहरूले कालकोठरीमा थुनेका अत्रि ऋषिलाई उनका सहयोगीसहित कारावास भत्काएर मुक्त गरायौ र खुवाउटिएका दुब्ला अत्रि ऋषिलाई पौष्टिक र शक्तिवर्धक आहार दिएर बलिया बनायौ।

परावतं नासत्यानुदेथामुच्चाबुध्नं चक्रथुर्जिह्मबारम् ।
क्षरन्नापो न पायनाय राये सहस्राय तृष्यते गोतमस्य ॥९॥

हे सत्यप्रति अडिग अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले कूपका पानीलाई एक ठाउँबाट अति टाढाको अर्को ठाउँसम्म लग्यौ। यसका लागि कूपको तल्लो भागलाई उचालेर अग्लो पाऱ्यौ र त्यसको प्रवाहलाई बाङ्गोटिङ्गो बाटोमा प्रवाहित गरायौ। गौतम ऋषिले त्यही जल आश्रमसम्म लगेर आश्रमवासीलाई खाने पानी पुऱ्याए। आश्रमका बासिन्दाहरूले सिँचाइका लागि पानी पाएपछि हजारौं किसिमका खाद्यान्न पाए।।

जुजुरुषो नासत्योत वव्रिं प्रामुञ्चतं द्रापिमिव च्यवानात् ।
प्रातिरतं जहितस्यायुर्दस्रादित्पतिमकृणुतं कनीनाम् ॥१०॥

हे शत्रुसंहारक सत्यनिष्ठ अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले जीर्ण शरीरका च्यवन ऋषिलाई काँचुली फेरेजत्तिकै गरी बुढ्यौलीको थोत्रो काया हटाएर तरुण बनाइदियौ। अति वृद्ध भएकाले बल खिइएका च्यवन ऋषिलाई लामो आयु प्रदान गऱ्यौ। त्यसपछि उनलाई तिमीहरू दुईले सुन्दर स्त्रीहरूका पति बनाइदियौ।

तद्वां नरा शंस्यं राध्यं चाभिष्टिमन्नासत्या वरूथम्।
यद्विद्वांसा निधिमिवापगूळ्हमुद्दर्शतादूपथुर्वन्दनाय ॥११॥

सत्यका आधारमा रहेर नेतृत्व प्रदान गर्ने हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईका असल र प्रशंसनीय काम स्तुति र आराधना गर्न योग्य छन्। हे ज्ञानसम्पन्न अश्विनीकुमार हो ! गहिरो खाडलमा परेका वन्दन ऋषिलाई तिमीहरू दुईले गोप्य स्थानबाट धन झिकेझैँ गरी निकाल्यौ।

तद्वां नरा सनये दंस उग्रमाविष्कृणोमि तन्यतुर्न वृष्टिम्।
दध्यङ् ह यन्मध्वाथर्वणो वामश्वस्य शीर्ष्णा प्र यदीमुवाच ॥१२॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईलाई अथर्व कुलमा जन्मिएका दधीचि ऋषिले अश्वका मुखबाट मधुविद्याको अभ्यास गराए। तिमीहरूले यस प्रचण्ड पुरुषार्थलाई सम्पन्न गर्‍यौ। बर्सिनुभन्दा पहिले गर्जन सुनाउने मेघको जस्तै स्वरमा हामी तिमीहरूको जनसेवी रहरको प्रचार गर्दछौँ।

अजोहवीन्नासत्या करा वां महे यामन्पुरुभुजा पुरन्धिः।
श्रुतं तच्छासुरिव वध्रिमत्या हिरण्यहस्तमश्विनावदत्तम् ॥१३॥

हे सत्ययुक्त अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै पालक, पोषक र कर्तव्यपरायणजस्ता असङ्ख्य गुणले सम्पन्न छौ। लामो यात्राका समयमा कुशाग्र बुद्धि भएकी स्त्रीले तिमीहरू दुईलाई आह्वान गरेकी थिइन्। ती आइमाईको प्रार्थना राजाको आज्ञाजस्तो अकाट्य ठान्यौ। तिमीहरूले उनलाई हिरण्यहस्त नामको असल पुत्र प्रदान गर्‍यौ।

आस्नो वृकस्य वर्तिकामभीके युवं नरा नासत्यामुमुक्तम्।
उतो कविं पुरुभुजा युवं ह कृपमाणमकृणुतं विचक्षे ॥१४॥

हे सत्ययुक्त अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले उपयुक्त समयमा ब्वाँसाका मुखमा परेका चराको उद्धार गर्‍यौ। हे असङ्ख्यलाई अन्नले पाल्नेहरू हो ! दृढनिश्चयका साथ प्रार्थना गरेका हुँदा तिमीहरू दुईले कृपापूर्वक नेत्रहीन कविलाई सुन्दर दृश्य देख्न सक्ने दृष्टि प्रदान गर्‍यौ।

चरित्रं हि वेरिवाच्छेदि पर्णमाजा खेलस्य परितक्म्यायाम्।
सद्यो जङ्घामायसीं विश्पलायै धने हिते सर्तवे प्रत्यधत्तम् ॥१५॥

खेल राजाका पक्षमा रहेर युद्ध गरेकी विश्पला नामकी स्त्रीको गोडो युद्धमा काटिएर चराको प्वाँख खसेझैँ झर्‍यो। रातका समयमा तिमीहरूले त्यस विश्पलालाई अर्को युद्ध सुरु हुँदा आक्रमण गर्न सक्ने गरी फलामको गोडो लगाइदिएर तयार राख्यौ।

शतं मेषान्वृक्ये चक्षदानमृज्राश्वं तं पितान्धं चकार।
तस्मा अक्षी नासत्या विचक्ष आधत्तं दस्रा भिषजावनर्वन् ॥१६॥

ऋज्राश्वले आफ्ना पिताका सय भेडाहरू खुवाउन ब्वाँसाहरू छोड्ने अपराध गरे। त्यसको दण्डस्वरूप उनका पिताले ऋज्राश्वलाई दृष्टिविहीन गराए। हे सत्यनिष्ठ, शत्रुनाशक, वैद्य अश्विनीकुमारहरू हो ! ती नेत्रहीनलाई कहिल्यै ननासिने आँखा दिएर तिमीहरू दुईले आँखाको दुःखबाट मुक्त गरायौ।

आ वां रथं दुहिता सूर्यस्य कार्ष्मेवातिष्ठदर्वता जयन्ती।
विश्वे देवा अन्वमन्यन्त हृद्भिः समु श्रिया नासत्या सचेथे ॥१७॥

हे सत्ययुक्त अश्विनीकुमार हो ! सूर्यकी पुत्री उषा घोडचढी प्रतियोगितामा विजयी हुँदै तिम्रा रथमा विराजमान भइन्। सबै देवताहरूले हार्दिक अभिनन्दन गरे। त्यसपछि तिमीहरू दुई पनि सूर्यपुत्री उषाबाट सुशोभित भयौ।

यदयातं दिवोदासाय वर्तिर्भरद्वाजायाश्विना हयन्ता।
रेवदुवाह सचनो रथो वां वृषभश्च शिंशुमारश्च युक्ता ॥१८॥

हे आह्वानयोग्य अश्विनीकुमारहरू हो ! तिमीहरू अन्नदाता दिवोदासका घरमा जाँदा उपभोग्य धनले भरिएको रथ लग्यौ। तिमीहरूको रथ शक्तिशाली र शत्रुविध्वंसक अश्वले तान्दै थिए। यो तिमीहरूकै विलक्षण सामर्थ्य हो।

रयिं सुक्षत्रं स्वपत्यमायुः सुवीर्यं नासत्या वहन्ता ।
आ जह्नावीं समनसोप वाजैस्त्रिरह्नो भागं दधतीमयातम् ॥१९॥

हे असत्यरहित अश्विनीकुमारहरू हो ! हविष्यान्नले तीनै काल यजन गर्ने जह्नुका प्रजाहरूका नजिकै आफैं गएर उत्तम बल, सुसन्तति, उत्तम वैभव र श्रेष्ठ शौर्यमय जीवन प्रदान गर्दछौ ।

परिविष्टं जाहुषं विश्वतः सीं सुगेभिर्नक्तमूहथू रजोभिः ।
विभिन्दुना नासत्या रथेन वि पर्वताँ अजरयू अयातम् ॥२०॥

हे अविनाशी, सत्ययुक्त अश्विनीकुमारहरू हो ! जाहुष राजालाई चारै तिरबाट शत्रुका सेनाले घेरेका बेला तिमीहरू दुईले विशेष तरिकाले त्यो घेरा भत्कायौ । त्यहाँबाट तिनलाई उठाएर गोप्य तर सजिलो बाटोबाट पर्वत पार गर्दै अति टाढाको सुरक्षित स्थानमा तिमीहरूले नै पुऱ्यायौ ।

एकस्या वस्तोरावतं रणाय वशमश्विना सनये सहस्रा ।
निरहतं दुच्छुना इन्द्रवन्ता पृथुश्रवसो वृषणावरातीः ॥२१॥

हे शक्तिशाली अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले वश नामका राजालाई हजारौं किसिमका असङ्ख्य धन प्राप्त गर्नका लागि एकै दिनमा पूर्ण सुरक्षित बनायौ । पृथुश्रवाका दुःखदायी शत्रुलाई इन्द्रदेवको सहायताले तिमीहरू दुईले पूर्ण रूपले नष्ट गरिदियौ ।

शरस्य चिदार्चत्कस्यावतादा नीचादुच्चा चक्रथुः पातवे वाः ।
शयवे चिन्नासत्या शचीभिर्जसुरये स्तर्यं पिप्यथुर्गाम् ॥२२॥

हे सत्यपालक अश्विनीकुमारहरू हो ! ऋचत्कका पुत्र शर तिर्खाले आत्तिएका थिए । तिमीहरू दुईले पानीको तहलाई इनारको गहिरो भागबाट माथि उचाल्यौ र उनलाई पिउनका लागि पानीको व्यवस्था मिलायौ । तिमीहरू दुईले आफ्ना सामर्थ्यले अत्यन्त ख्याउटे बाँझो गाईलाई पनि दुधालु बनाइदियौ ।

अवस्यते स्तुवते कृष्णियाय ऋजूयते नासत्या शचीभिः ।
पशुं न नष्टमिव दर्शनाय विष्णाप्वं ददथुर्विश्वकाय ॥२३॥

हे सत्ययुक्त अश्विनीकुमारहरू हो ! कृष्णका पुत्र विश्वकको पुत्र विष्णाप्व हराएको थियो । उनी तिमीहरू दुईलाई प्रार्थना गर्दै विष्णाप्वलाई खोज्दै सुगम मार्गमा हिँडेका थिए । उनले आफ्नो सुरक्षा पनि खोजेका थिए । उनको खोजाइ हराएको पशु खोजेजस्तै थियो । तिमीहरू दुईले आफ्ना सामर्थ्यले सुरक्षासाथ विष्णाप्वलाई खोजेर देखिने गरी उपस्थित गरायौ ।

दश रात्रीरशिवेना नव द्यूनवनद्धं श्नथितमप्स्वन्तः ।
विप्रुतं रेभमुदनि प्रवृक्तमुन्निन्यथुः सोममिव स्रुवेण ॥२४॥

रेभ नामका ऋषिलाई दुष्ट राक्षसले डोरीले बाँधेर नौ दिन दस रातसम्म पानीमुनि फ्याँकेका थिए । त्यसो हुँदा उनी भिजेर र डराएर दुःखी थिए । उनलाई तिमीहरू दुईले सुरोले सोमरस उचालेझैं झिकेर ल्यायौ ।

प्र वां दंसांस्यश्विनाववोचमस्य पतिः स्यां सुगवः सुवीरः ।
उत पश्यन्नश्नुवन्दीर्घमायुरस्तमिवेज्जरिमाणं जगम्याम् ॥२५ ॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैलाई हामीले यस किसिमले विशेष वर्णन गरेका छौं । यसबाट हामी उत्तम गाई र शूरवीर पुत्रले सम्पन्न भई राष्ट्का शासक बन्न सकौं । दीर्घ जीवन पाएर दर्शन आदिको सामर्थ्यले सम्पन्न हुँदै मानिस आफ्ना घरमा प्रवेश गरेझैं हामी बुढ्यौलीमा प्रवेश गरौं ।

[सूक्त - ११७]

ऋषि - कक्षीवान् दैर्घतमस । देवता - अश्विनीकुमार । छन्द - त्रिष्टुप् ।

मध्वः सोमस्याश्विना मदाय प्रत्नो होता विवासते वाम् ।
बर्हिष्मती रातिर्विश्रिता गीरिषा यातं नासत्योप वाजैः ॥१॥

हे सत्ययुक्त अश्विनीकुमारहरू हो ! उहिलेदेखि तिमीहरूको राम्रो सेवा गरेका साधकले मधुर सोमरसको आनन्द तिमीहरूका लागि ल्याएका छन् । हाम्रो प्रार्थना तिमीहरूसमक्ष पुगिसकेको छ । यस कुशका आसनमा तिमीहरूका लागि सोमपात्र भरिएको छ । अतः तिमीहरू दुवै आफ्नो अन्नयुक्त शक्तिसँगै हाम्रा नजिकै आओ र हाम्रो सहयोग गर ।

**यो वामश्विना मनसो जवीयान्रथः स्वश्वो विश आजिगाति।**
**येन गच्छथः सुकृतो दुरोणं तेन नरा वर्तिरस्मभ्यं यातम् ॥२॥**

नेतृत्वको क्षमतासम्पन्न हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईको रथ मनभन्दा पनि तेज रूपमा चल्ने र असल अश्व रहेको छ। यस रथले तिमीहरूलाई प्रजाका बीचमा लैजान्छन्। त्यसैले सत्कर्ममा लागेका साधकहरूका घरमा तिमीहरूलाई लैजान्छ। उसै रथमा आरूढ भएर तिमीहरू दुवै हामीकहाँ आओ।

**ऋषिं नरावंहसः पाञ्चजन्यमृबीसादत्रिं मुञ्चथो गणेन।**
**मिनन्ता दस्योरशिवस्य माया अनुपूर्वं वृषणा चोदयन्ता ॥३॥**

हे नेतृत्वप्रदायक बलशाली अश्विनीकुमारहरू हो ! समाजको कल्याणका निम्ति प्रयत्नशील रहने अत्रि ऋषि सहयोगीसहित दुःखद कारावासमा परेका थिए। तिमीहरू दुवैले उनलाई त्यहाँबाट मुक्त गरायौ। तिमीहरू दुवै शत्रुको संहार गर्दछौ। शत्रुका विनाशकारी मायावी चाललाई पहिले नै थाहा पाएर क्रमशः हटाउने गर्छौ।

**अश्वं न गूळ्हमश्विना दुरेवैर्ऋषिं नरा वृषणा रेभमप्सु।**
**सं तं रिणीथो विप्रुतं दंसोभिर्न वां जूर्यन्ति पूर्व्या कृतानि ॥४॥**

हे शक्तिशाली नेतृत्व प्रदान गर्ने अश्विनीकुमारहरू हो ! दुष्कर्मीहरूले रेभ ऋषिलाई पानीभित्र फ्याँकेका थिए। उनको शरीर अत्यन्त ख्याउटे थियो। उनलाई तिमीहरू दुईले आफ्ना औषधीउपचारले विशेष तन्दुरुस्त घोडाजस्तै गरायौ। तिमीहरूले पहिले गरेका यस्ता सबै कार्य अविस्मरणीय छन्।

**सुषुप्वांसं न निर्ऋतेरुपस्थे सूर्यं न दस्रा तमसि क्षियन्तम्।**
**शुभे रुक्मं न दर्शतं निखातमुदूपथुरश्विना वन्दनाय ॥५॥**

हे शत्रुनाशक अश्विनीकुमारहरू हो ! अन्धकारमा डुबेका सूर्यदेव उदाउँदै माथि आएझैँ, सुतेका मानिसलाई भूमिबाट सूर्यले उठाएझैँ अथवा जमिनमा खसेको सुनको सुन्दर गहना उठाएर लगाएझैँ तिमीहरू दुईले वन्दनलाई खाँलाबाट बाहिर निकाल्यौ।

**तद्वां नरा शंस्यं पज्रियेण कक्षीवता नासत्या परिज्मन्।**
**शफादश्वस्य वाजिनो जनाय शतं कुम्भाँ असिञ्चतं मधूनाम् ॥६॥**

हे सत्ययुक्त नेतृत्व प्रदान गर्ने अश्विनीकुमारहरू हो ! अङ्गिरस गोत्रको पज्र कुलमा उत्पन्न कक्षीवान् ऋषिका लागि तिमीहरूले गरेको कार्य अति प्रशंसनीय छ। घोडाको टापजस्तो शक्तिशाली र विशाल पात्रद्वारा तिमीहरूले पिउनका लागि मधुका सय घडा पूर्ण रूपले सबै भरेर मानिसहरूले राखिएका थिए।

**युवं नरा स्तुवते कृष्णियाय विष्णाप्वं ददथुर्विश्वकाय।**
**घोषायै चित्पितृषदे दुरोणे पतिं जूर्यन्त्या अश्विनावदत्तम् ॥७॥**

हे कुशल नेतृत्व प्रदान गर्ने अश्विनीकुमारहरू हो ! तिमीहरू दुईको प्रार्थना गर्ने कृष्णका नाति र विश्वकका छोरा विष्णाप्वलाई उसका पितासमक्ष पुऱ्यायौ। रोगाएर पिताका घरमा बसेकी बुढीकन्या घोषालाई निरोगी नवयुवती बनाएर सुयोग्य वर तिमीहरू दुईले नै प्रदान गऱ्यौ।

**युवं श्यावाय रुशतीमदत्तं महः क्षोणस्याश्विना कण्वाय।**
**प्रवाच्यं तद्वृषणा कृतं वां यन्नार्षदाय श्रवो अध्यधत्तम् ॥८॥**

हे बलबर्गतले युक्त अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले नै श्याव ऋषिलाई उत्तम तेजस्विनी स्त्री प्रदान गऱ्यौ। नेत्रहीन कण्वलाई उत्तम ज्योति दियौ। नृषदका बहिरा पुत्रलाई सुन्ने शक्ति दियौ। तिमीहरू दुईका यी सबै काम प्रशंसनीय छन्।

**पुरू वर्पांस्यश्विना दधाना नि पेदव ऊहथुराशुमश्वम्।**
**सहस्रसां वाजिनमप्रतीतमहिहनं श्रवस्यं तरुत्रम् ॥९॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै विभिन्न रूप लिएर रमाउँछौ। तिमीहरूले नै पेदुलाई विजयशील, शत्रु विनाश गर्न योग्य, असङ्ख्य धन प्रदान गर्न सक्षम, कीर्तिले सम्पन्न र संरक्षणकर्ता बनायौ। तिमीहरूले नै उनलाई बलशाली र छिटो कुद्ने अश्व प्रदान गरेका थियौ।

एतानि वां श्रवस्या सुदानू ब्रह्माङ्गूषं सदनं रोदस्योः ।
यद्वां पज्रासो अश्विना हवन्ते यातमिषा च विदुषे च वाजम् ॥१०॥

उत्तम दान दाता हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईका यी कार्यहरू श्रवणीय छन् । तिमीहरूका निमित्त वेदमन्त्ररूपी स्तोत्र बनाइएका छन् । तिमीहरू दुई स्वर्ग र पृथिवी दुवै लोकमा रहन्छौ । हे अश्विनीकुमारहरू ! तिमीहरूलाई अङ्गिरसले आह्वान गर्दछन्, त्यसैले अन्नका साथ आएर यजमानलाई पनि अन्न र बल प्रदान गर ।

सूनोर्मानेनाश्विना गृणाना वाजं विप्राय भुरणा रदन्ता ।
अगस्त्ये ब्रह्मणा वावृधाना सं विश्पलां नासत्यारिणीतम् ॥११॥

हे सर्व पोषणकर्ता, सत्ययुक्त अश्विनीकुमारहरू हो ! तिमीहरू दुईसित पुत्र प्राप्तिका लागि मानले प्रार्थना गरे । तिनलाई पुत्रोत्पत्तिको सामर्थ्य प्रदान गऱ्यौ । अगस्त्यले प्रार्थना गरेपछि तिमीहरूले विश्पलाको चुँडिएको खुट्टो गाँसिदियौ ।

कुह यान्ता सुष्टुतिं काव्यस्य दिवो नपाता वृषणा शयुत्रा ।
हिरण्यस्येव कलशं निखातमुदूपथुर्दशमे अश्विनाहन् ॥१२॥

हे बलवर्गत भएका अश्विनीकुमारहरू हो ! तिमीहरू दुई दिव्यलोकलाई स्थायित्व दिने र शयुका संरक्षक हौ । शुक्रको प्रार्थना स्वीकार गरेर दुवै कता गयौ ? इनारमा खसेका रेभलाई दसौँ दिन खोलाबाट सुनको थैलोझैँ निकालेपछि तिमीहरू दुवै कता गयौ ?

युवं च्यवानमश्विना जरन्तं पुनर्युवानं चक्रथुः शचीभिः ।
युवो रथं दुहिता सूर्यस्य सह श्रिया नासत्यावृणीत ॥१३॥

हे सत्यमाथि अडिग अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले आफ्ना बलबर्गतले अत्यन्त वृद्ध च्यवन ऋषिलाई तन्नेरी बनायौ । सूर्यकी पुत्रीले आफ्नो सौभाग्यसहित तिमीहरू दुईका रथमा आएर विराजमान भएको स्वीकार गरेका थियौ ।

युवं तुग्राय पूर्व्येभिरेवैः पुनर्मन्यावभवतं युवाना ।
युवं भुज्युमर्णसो निःसमुद्राद्विभिरूहथुर्ऋज्रेभिरश्वैः ॥१४॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै तुग्र राजाबाट विगतमा गरिएका भव्य कर्मबाट पूजनीय थियौ नै, तर आज उनका पुत्र भुज्युलाई पक्षीझैँ उड्ने अश्व भएका यानद्वारा अनन्त महासमुद्रबाट सुरक्षित गरेर उनका पितासमक्ष पुऱ्यायौ । यसबाट तुग्र नरेशका लागि तिमीहरू दुवै अत्यन्त सम्मानित बनेका छौ ।

अजोहवीदश्विना तौग्र्यो वां प्रोढहः समुद्रमव्यथिर्जगन्वान् ।
निष्टमूहथुः सुयुजा रथेन मनोजवसा वृषणा स्वस्ति ॥१५॥

हे शक्तिशाली अश्विनीकुमारहरू हो ! तुग्र राजाका पुत्र भुज्युलाई सागरयात्राका लागि पठाइएको थियो । उनी कुनै अप्ठ्यारो नामनीकन गएका थिए । उनले सहयोगका लागि तिमीहरू दुईलाई आह्वान गरे । त्यस बेला मनजस्तै चाँडो गरी उत्तम तरिकाले रथमा राखेर तिमीहरू दुईले उनलाई उद्धार गरी पिताका घरमा सकुशल पुऱ्याइदियौ ।

अजोहवीदश्विना वर्तिका वामास्नो यत्सीममुञ्चतं वृकस्य ।
वि जयुषा ययथुः सान्वद्रेर्जातं विष्वाचो अहतं विषेण ॥१६॥

हे अश्विनीकुमारहरू हो ! वर्तीले आह्वान गर्दा तिमीहरू दुवै त्यहाँ पुगेर ब्वाँसाका मुखबाट उसलाई मुक्त गरायौ । त्यसो भएपछि उनी आफ्नो विजयी रथ लिएर पर्वतको शिखर पार गर्दै पल्लोपट्टि पुगे । उनलाई घेरा हाल्ने शत्रुका सैनिकलाई तिमीहरूले विष भरिएका बाणले विनाश गऱ्यौ ।

शतं मेषान्वृक्ये मामहानं तमः प्रणीतमशिवेन पित्रा ।
आक्षी ऋज्राश्वे अश्विनावधत्तं ज्योतिरन्धाय चक्रथुर्विचक्षे ॥१७॥

ऋज्राश्वले सय वटा भेडा ब्वाँसालाई ख्वाए । त्यसपछि उनका पिता रिसाएर छोरालाई दृष्टिहीन गराए । हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैले दृष्टिहीनलाई दृष्टि प्राप्त होस् भन्ने उद्देश्यले आँखाको पुनर्निर्माण गरी ती ऋज्राश्वका आँखामा ज्योति प्रदान गऱ्यौ ।

शुनमन्धाय भरमह्वयत्सा वृकीरश्विना वृषणा नरेति।
जारः कनीनइव चक्षदान ऋज्राश्वः शतमेकं च मेषान् ॥१८॥

हे समर्थशील नेतृत्व प्रदान गर्ने अश्विनीकुमारहरू हो ! तन्नेरी जारले होसै नगरी तरुणीलाई सर्वस्व जिम्मा लगाएझैं एक सय भेडाहरू आफ्नो सुखका लागि ऋज्राश्वले मलाई खान दिइएको थियो भन्दै ऋज्राश्व दृष्टिहीन भएपछि पोथी ब्वाँसोले तिमीहरूलाई प्रार्थना गरेको थियो।

मही वामूतिरश्विना मयोभूरुत स्रामं धिष्ण्या सं रिणीथः।
अथा युवामिदह्वयत्पुरन्धिरागच्छतं सीं वृषणाववोभिः ॥१९॥

हे ज्ञासम्पन्न सामर्थ्यशाली अश्विनीकुमारहरू हो ! तिमीहरू दुईको संरक्षणशक्ति अत्यन्त कल्याणकारी छ। तिमीहरू अङ्गभङ्ग भएकालाई राम्रो बनाउँछौ। तिमीहरू दुवैलाई त्यही संरक्षण सामर्थ्यका साथमा आउनका लागि असल बुद्धिमती स्त्रीहरूले आह्वान गरेका छन्।

अधेनुं दस्रा स्तर्यं विषक्तामपिन्वतं शयवे अश्विना गाम्।
युवं शचीभिर्विमदाय जायां न्यूहथुः पुरुमित्रस्य योषाम् ॥२०॥

हे शत्रुनाशक अश्विनीकुमारहरू हो ! गर्भधारण गर्न असमर्थ, दुर्बल, दुधरहित गाईलाई शयु ऋषिका कल्याणका निम्ति तिमीहरू दुईले दुधसम्पन्न गरायौ। विमदको धर्मपत्नीका रूपमा पुरुमित्रकी पुत्रीलाई तिमीहरूले नै आफ्नो सामर्थ्यले दिलायौ।

यवं वृकेणाश्विना वपन्तेषं दुहन्ता मनुषाय दस्रा।
अभि दस्युं बकुरेणा धमन्तोरु ज्योतिश्चक्रथुरार्याय ॥२१॥

हे शत्रुविनाशक अश्विनीकुमारहरू हो ! हलो जोतेर रोपगोड गर्ने मानिसहरूलाई जौ आदि अन्नबालीको रस उत्पन्न गरिदिन्छौ र शत्रुलाई धारिला हतियारले विनाश गर्दछौ। तिमीहरू दुईले नै आर्यहरूलाई विस्तृत ज्ञानको प्रकाश देखायौ।

आथर्वणायाश्विना दधीचेऽश्व्यं शिरः प्रत्यैरयतम्।
स वां मधु प्र वोचदृतायन्त्वाष्ट्रं यद्दस्रावपिकक्ष्यं वाम् ॥२२॥

हे शत्रुविनाशक अश्विनीकुमारहरू हो ! अथर्व कुलमा उत्पन्न भएका दधीचि ऋषिलाई अश्वको शिर तिमीहरू दुईले लगायौ। ती ऋषिले यज्ञमार्गको प्रसार गर्दै तिमीहरू दुवैलाई मधुविद्या सिकाए। उनैले तिमीहरू दुईलाई शरीरबाट छुट्टिएका अङ्गहरू जोड्ने विद्या पनि सिकाए।

सदा कवी सुमतिमा चके वां विश्वा धियो अश्विना प्रावतं मे।
अस्मे रयिं नासत्या बृहन्तमपत्यसाचं श्रुत्यं रराथाम् ॥२३॥

सत्यप्रति स्थिर रहने कविजस्ता हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै हामीलाई सधैं सद्बुद्धिको प्रेरणा प्रदान गर। हामीलाई सत्कर्म र सद्ज्ञानतर्फ राम्ररी प्रेरित गर। तिमीहरू दुवैले असल सन्तानका साथ मूल्यवान् धनसम्पत्ति हामीलाई प्रदान गर।

हिरण्यहस्तमश्विना रराणा पुत्रं नरा वध्रिमत्या अदत्तम्।
त्रिधा ह श्यावमश्विना विकस्तमुज्जीवस ऐरयतं सुदानू ॥२४॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू उत्तम दानदाता, उदार र नेतृत्वको सामर्थ्यले सम्पन्न छौ। बाँझीलाई पुत्र दिएर उसका हात स्वर्ण सम्पदा धारण गर्नेयोग्य बनायौ। तीन ठाउँमा चोट लागेर अलपत्र भएका श्यावलाई बचाउनका लागि तिमीहरू दुईले राम्रो स्याहार गरेका थियौ।

एतानि वामश्विना वीर्याणि प्र पूर्व्याण्यायवोऽवोचन्।
ब्रह्म कृण्वन्तो वृषणा युवभ्यां सुवीरासो विदथमा वदेम ॥२५॥

हे सामर्थ्यवान् अश्विनीकुमारहरू हो ! तिमीहरूका शौर्ययुक्त कर्मलाई उहिल्यैदेखि सबै मानिसले प्रशंसा गरिरहन्छन्। तिमीहरूकै निम्ति हामीले यो स्तोत्र रचना गरेका हौं। यसबाट हामी श्रेष्ठ वीर बनेर सभाहरूमा प्रखर प्रवक्ता बनौं।

[सूक्त - ११८]

ऋषि - कक्षीवान् दैर्घतमस। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

आ वां रथो अश्विना श्येनपत्वा सुमृळीकः स्ववाँ यात्वर्वाङ्।
यो मर्त्यस्य मनसो जवीयान्त्रिवन्धुरो वृषणा वातरंहाः ॥१॥

हे शक्तिशाली अश्विनीकुमारहरू हो ! तीनै लोकभन्दा बलियो, बस्न सजिलो, मनभन्दा चाँडो

कुद्ने, वायुझैं सहज गति भएको र बाज पक्षीझैं आकाशमा उड्ने रथ तिमीहरू दुवैका लागि तयार गरिएको छ। त्यसैमा तिमीहरू दुवै हामीकहाँ आओ।

**त्रिवन्धुरेण त्रिवृता रथेन त्रिचक्रेण सुवृता यातमर्वाक्।**
**पिन्वतं गा जिन्वतमर्वतो नो वर्धयतमश्विना वीरमस्मे॥२॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू आफ्ना तीन पाङ्ग्रे, तीन ठाउँ बाँधेको, तीन कुने आकृतिको र उत्तम गति भएका रथमा चढेर हामीकहाँ आओ। हाम्रा लागि तिमीहरू दुधालु गाई, गतिशील अश्व र शूरवीर सन्तानहरू प्रदान गर।

**प्रवद्यामना सुवृता रथेन दस्राविमं शृणुतं श्लोकमद्रेः।**
**किमङ्ग वां प्रत्यवर्तिं गमिष्ठाहुर्विप्रासो अश्विना पुराजाः॥३॥**

हे शत्रुविनाशक अश्विनीकुमारहरू हो ! सुन्दर, शीघ्र गतिशील आफ्ना रथमा यहाँ आओ र सोमरस तयार गर्ने बेलामा गाएका स्तोत्रगान सुन। तिमीहरू दुई दरिद्रता र दुःख नाश गर्नका लागि विचरण गर्दछौ भनी उहिलेका ज्ञानीहरू बारम्बार भन्दछन्।

**आ वां श्येनासो अश्विना वहन्तु रथे युक्तास आशवः पतङ्गाः।**
**ये अप्तुरो दिव्यासो न गृध्रा अभि प्रयो नासत्या वहन्ति॥४॥**

हे सत्यका पालनकर्ता अश्विनीकुमारहरू हो ! गिद्धजस्तो तीव्र गतिले आकाशमा उड्ने बाजपक्षीले तानेका रथले तिमीहरू दुईलाई अति शीघ्र यज्ञस्थलतर्फ ल्याओस्।

**आ वां रथं युवतिस्तिष्ठदत्र जुष्ट्वी नरा दुहिता सूर्यस्य।**
**परि वामश्वा वपुषः पतङ्गा वयो वहन्त्वरुषा अभीके॥५॥**

हे कुशल नेताजस्ता अश्विनीकुमारहरू हो ! तिमीहरू दुईसित प्रेम गर्ने सूर्यदेवकी तरुणी पुत्री उषा तिमीहरूका रथमा चढेर बसिन्। यस रथमा राता वर्णका, चराजस्तो शरीरको आकृति भएका, उड्न सक्ने अश्व नारिएका छन्। तिनले तिमीहरू दुईलाई यज्ञस्थलमा लिएर आऊन्।

**उद्वन्दनमैरतं दंसनाभिरुद्रेभं दस्रा वृषणा शचीभिः।**
**निष्टौग्र्यं पारयथः समुद्रात्पुनश्च्यवानं चक्रथुर्युवानम्॥६॥**

हे सामर्थ्यवान्, शत्रुनाशक अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैले आफ्ना अद्भुत सामर्थ्यले वन्दन र रेभलाई इनारबाट बाहिर निकाल्यौ। तुग्र राजाका पुत्र भुज्युलाई समुद्रबाट निकालेर घरमा पुऱ्यायौ र वृद्ध च्यवनलाई युवा बनायौ।

**युवमत्रयेऽवनीताय तप्तमूर्जमोमानमश्विनावधत्तम्।**
**युवं कण्वायापिरिप्ताय चक्षुः प्रत्यधत्तं सुष्टुतिं जुजुषाणा॥७॥**

हे अश्विनीकुमारहरू हो ! कालकोठरीभित्र रहेका अत्रि ऋषिको हितका लागि तिमीहरू दुईले जलमा भएका अग्निलाई शान्त गरायौ र पौष्टिक तथा शक्तिवर्धक अन्न उनलाई दियौ। त्यसै गरी बाटो देख्न सक्ने गरी कण्वका आँखा ज्योतिसम्पन्न गरायौ। त्यसैले तिमीहरू दुईको सबै तिरबाट प्रशंसा हुँदै छ।

**युवं धेनुं शयवे नाधितायापिन्वतमश्विना पूर्व्याय।**
**अमुञ्चतं वर्तिकामंहसो निः प्रति जङ्घां विश्पलाया अधत्तम्॥८॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले उहिले नै स्तुति गर्ने शयुका लागि गाईलाई दुधालु बनायौ। बट्टाईलाई ब्वाँसाको मुखबाट छुटायौ र विश्पलाको भाँचिएको खुट्टाका ठाउँमा प्रक्रियाअनुसार फलामको खुट्टो लगाइदियौ।

**युवं श्वेतं पेदव इन्द्रजूतमहिहनमश्विनादत्तमश्वम्।**
**जोहूत्रमर्यो अभिभूतिमुग्रं सहस्रसां वृषणं वीड्वङ्गम्॥९॥**

हे अश्विनीकुमारहरू हो ! शत्रु नाश गर्ने, दह्रा, बलिया अङ्ग हुने, शत्रुलाई पराजित गर्ने, अनेकौं प्रकारका धन विजेता इन्द्रदेवबाट प्रेरित भएपछि तिमीहरू दुईले युद्धमा अति उपयोगी, बलशाली, सेतो अश्व पेदुलाई प्रदान गरेका थियौ।

**ता वां नरा स्ववसे सुजाता हवामहे अश्विना नाधमानाः।**
**आ न उप वसुमता रथेन गिरो जुषाणा सुविताय यातम्॥१०॥**

हे कुशल नेतृत्वदायक अश्विनीकुमारहरू हो ! उत्तम कुलमा उत्पन्न भएका तिमीहरू दुईलाई आफ्नो

संरक्षणका लागि हामी आह्वान गर्दछौं। तिमीहरू हाम्रो प्रार्थना स्वीकार गर। हाम्रो प्रिय वाणी सुन्नासाथ आफ्नो रथ धनसम्पदाले भरिपूर्ण गरेर हाम्रो हितका लागि यहाँ आओ।

**आ श्येनस्य जवसा नूतनेनास्मे यातं नासत्या सजोषाः।**
**हवे हि वामश्विना रातहव्यः शश्वत्तमाया उषसो व्युष्टौ ॥११॥**

हे सत्ययुक्त अश्विनीकुमारहरू हो ! तिमीहरू दुई एकमत भएर आफ्ना बाजपक्षीलाई अति वेगले गतिशील गराएर हामीकहाँ आओ। हे अश्विनीकुमारहरू हो ! शाश्वत रहने उषादेवी उदाउनासाथ हामी हविष्यान्न तयार गरेर तिमीहरू दुवैलाई आह्वान गर्छौं। तिमीहरू आएर हवि ग्रहण गर।

[सूक्त - ११९]

**ऋषि** - कक्षीवान् दैर्घतमस। **देवता** - अश्विनीकुमार। **छन्द** - जगती।

**आ वां रथं पुरुमायं मनोजुवं जीराश्वं यज्ञियं जीवसे हुवे।**
**सहस्रकेतुं वनिनं शतद्वसुं श्रुष्टीवानं वरिवोधामभि प्रयः ॥१॥**

हे अश्विनीकुमारहरू हो ! विभिन्न किसिमका कलाकारिताले भरिएको, मनजस्तै गतिमान, पवित्र, गतिशील अश्व नारिएको, विभिन्न ध्वजाहरूले सजिएको, सुखदायक, सयौं किसिमका धनले भरिपूर्ण, तेज गतिमा हिँड्ने रथमा तिमीहरूलाई हविष्यान्न ग्रहण गर्नका लागि आह्वान गर्दछौं। तिमीहरू आओ र दीर्घ जीवन प्रदान गर।

**ऊर्ध्वा धीतिः प्रत्यस्य प्रयामन्यधायि शस्मन्त्समयन्त आ दिशः।**
**स्वदामि घर्मं प्रति यन्त्यूतय आ वामूर्जानी रथमश्विनारुहत् ॥२॥**

हे अश्विनीकुमारहरू हो ! रथ अगाडि सर्नेबित्तिकै हाम्रो बुद्धि तिमीहरू दुईको प्रशंसा गर्दै उच्च स्तरीय स्तोत्रको गान गर्न लागेको छ। सबै दिशाका मानिसहरू यसमा सम्मिलित छन्। घिउ आदि उत्तम पदार्थ बनाएर यज्ञका लागि तयार गर्दछन्। यज्ञको प्रभावबाट संरक्षण गर्ने शक्तिहरू चारै दिशामा फैलिँदै छन्। तिमीहरू दुवैका रथमा सूर्यदेवकी तेजस्वी पुत्री उषादेवी विराजमान छन्।

**सं यन्मिथः पस्पृधानासो अग्मत शुभे मखा अमिता जायवो रणे।**
**युवोरह प्रवणे चेकिते रथो यदश्विना वहथः सूरिमा वरम् ॥३॥**

हे अश्विनीकुमारहरू हो ! जनताको हितका लागि अनेकौं युद्ध जित्ने महान् शूरवीरहरू पारस्परिक प्रतिस्पर्धाका भावले एकत्रित हुन्छन्। त्यस बेला तिमीहरू दुईको रथ मन्द गतिले तल ओर्लंदै देखिन्छ। त्यसमा याजकका लागि उत्तम धन ल्याइएको हुन्छ।

**युवं भुज्युं भुरमाणं विभिर्गतं स्वयुक्तिभिर्निवहन्ता पितृभ्य आ।**
**यासिष्टं वर्तिर्वृषणा विजेन्यं दिवोदासाय महि चेति वामवः ॥४॥**

हे सर्वशक्तिमान् अश्विनीकुमारहरू हो ! जीवनबाट हरेस खाएका तुग्रपुत्र भुज्युलाई तिमीहरू दुईका प्रयासले पक्षीझैं उड्ने यानमा मातापितासमक्ष पुऱ्यायौ। तिमीहरू दुईको यो सहयोग र संरक्षण दिवोदासका लागि पनि अति महत्त्वपूर्ण थियो।

**युवोरश्विना वपुषे युवायुजं रथं वाणी येमतुरस्य शर्ध्यम्।**
**आ वां पतित्वं सख्याय जग्मुषी योषावृणीत जेन्या युवां पती ॥५॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुई स्वयंले रथ हाँक्दा अति शोभायमान भयौ। तिमीहरूकै इसारामा रथ चल्दै थियो। मित्रताको इच्छा गर्ने, विजयबाट मात्रै प्राप्त गर्न सकिने सूर्यपुत्री उषादेवीले तिमीहरू दुवैलाई पतिका रूपमा वरण गरिन्।

**युवं रेभं परिषूतेरुरुष्यथो हिमेन घर्मं परितप्तमत्रये।**
**युवं शयोरवसं पिप्यथुर्गवि प्र दीर्घेण वन्दनस्तार्यायुषा ॥६॥**

तिमीहरू दुवैले रेभलाई कष्टबाट मुक्ति दियौ। अत्रि ऋषि बसेका कारागारका अत्यन्त गर्मी ठाउँलाई शीतल जलले शान्त गरायौ। शयुका लागि गाईलाई दुधालु बनायौ र तिमीहरू दुईले नै वन्दनलाई लामो आयु प्रदान गऱ्यौ।

**युवं वन्दनं निर्ऋतं जरण्यया रथं न दस्रा करणा समिन्वथः।**
**क्षेत्रादा विप्रं जनथो विपन्यया प्र वामत्र विधते दंसना भुवत् ॥७॥**

शत्रु संहार गर्नमा कुशल हे अश्विनीकुमारहरू हो ! थोत्रो रथ मर्मत गरेझैं तिमीहरूले अत्यन्त बुढा वन्दनलाई तन्नेरी बनाइदियौ। प्रार्थनाबाट प्रशंसित हुँदै ज्ञानी वृक्षलाई भूमिबाट उत्पन्न गरायौ। त्यसैले तिमीहरू दुईका यो सहयोगपूर्ण कार्यहरू यहाँका मानिसका लागि अत्यन्तै प्रभावकारी छन्।

अगच्छतं कृपमाणं परावति पितुः स्वस्य त्यजसा निबाधितम्।
स्वर्वतीरित ऊतीर्युवोरह चित्रा अभीके अभवन्नभिष्टयः ॥८॥

आफ्नै बाबुले त्यागेपछि टुग्रले ज्यादै दुःख पाएका थिए। त्यस अवस्थामा प्रार्थना गर्ने मन्युकहाँ तिमीहरू दुवै निकै टाढादेखि आयौ र उनलाई लग्यौ। तिमीहरूको यस्तो संरक्षणकारी कार्य ज्यादै अद्‌भुत, तेजस्वी र सबैका निम्ति अनुकरणीय छ।

उत स्या वां मधुमन्मक्षिकारपन्मदे। सोमस्यौशिजो हुवन्यति।
युवं दधीचो मन आ विवसथोऽथा शिरः प्रति वामश्व्यं वदत् ॥९॥

सोमपानका प्रसन्नताले उशिक्का पुत्र कक्षीवान् माहुरीले मधुर स्वरमा गुञ्जन गर्दै तिमीहरूलाई आह्वान गरे। तिमीहरूका सेवाबाट दधीचि ऋषिको मन प्रभावित भयो। त्यसपछि उनले आफ्नो टाउको घोडाको जस्तै बनाए र तिमीहरू दुवैलाई मधुविद्याको उपदेश दिए।

युवं पेदवे पुरुवारमश्विना स्पृधां श्वेतं तरुतारं दुवस्यथः।
शर्यैरभिद्युं पृतनासु दुष्टरं चर्कृत्यमिन्द्रमिव चर्षणीसहम् ॥१०॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैले सबैबाट प्रशंसनीय, तेजस्वी, युद्धमा विजय प्राप्त गर्ने, शत्रुपक्षका लागि अजेय, इन्द्रदेवजस्तै शत्रुहरूलाई पराजित गर्ने, चञ्चल सेतो अश्व पेदु राजालाई प्रदान गर्‍यौ।

[सूक्त - १२०]

ऋषि - कक्षीवान् दैर्घतमस। देवता - अश्विनीकुमार। छन्द - गायत्री ककुप् उष्णिक्।

का राधद्धोत्राश्विना वां को वां जोष उभयोः। कथा विधात्यप्रचेताः ॥१॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरूलाई प्रसन्न गर्ने प्रिय प्रार्थना कस्ता छन् ? कसले तिमीहरूलाई सन्तुष्ट गराउनका सक्ला ? अल्पज्ञ मानिसले तिमीहरूको उपासना कुन रीतिले गर्नुपला ?

विद्वांसाविदुरः पृच्छेदविद्वानित्थापरो अचेताः। नू चिन्नु मर्ते अक्रौ ॥२॥

ज्ञानी र प्रतिभारहित दुवै किसिमका मानिस विद्वान् अश्विनीकुमारहरूबाट उचित मार्गदर्शन प्राप्त गर्छन्। उनीहरूले मानवहितका लागि केही पनि गर्न नसक्ने असमर्थता प्रकट गर्लान् ? यस्तो सम्भव छैन, अवश्य उनीहरू मानवहिततर्फ प्रेरित हुनेछन्।

ता विद्वांसा हवामहे वां ता नो विद्वांसा मन्म वोचेतमद्य।
प्रार्चद्दयमानो युवाकुः ॥३॥

सहयोगका निम्ति हामी अविश्वनीकुमारलाई आह्वान गर्दछौं। आज तिमीहरू यहाँ आएर चिन्तनयुक्त मार्ग प्रदर्शन गराओ। तिमीहरू दुईप्रति मित्रताको इच्छा गर्ने यी मानिसहरू हवि समर्पित गर्दै तिमीहरूको अर्चना गर्दछन्।

वि पृच्छामि पाक्या३ न देवान्वषट्कृतस्याद्भुतस्य दस्रा।
पातं च सह्यसो युवं च रभ्यसो नः ॥४॥

हे शत्रुसंहारक अश्विनीकुमारहरू हो ! हाम्रो प्रार्थना तिमीहरूबाहेक कसैलाई होइन। तिमीहरू अद्‌भुत शक्तिका उत्पादक हौ, आदरपूर्वक दिइएको यो सोमरस ग्रहण गर र हामीलाई जिम्मेदारीपूर्ण कार्य निर्वाह गर्न समर्थ बनाओ।

प्र या घोषे भृगवाणे न शोभे यया वाचा यजति पज्रियो वाम्।
प्रैषयुर्न विद्वान् ॥५॥

घोषा ऋषिका पुत्र, भृगु र ज्ञानसम्पन्न एवं अन्नका इच्छुक पज्र कुलमा उत्पन्न अङ्गिरा ऋषिले गरेभैं स्तुतिरूपी वाणीको प्रयोग प्रस्तुतीकरण गर्न सक्ने क्षमता हाम्रा वाणीमा पनि आओस्।

श्रुतं गायत्रं तकवानस्याहं चिद्धि रिरेभाश्विना वाम्। आक्षी शुभस्पती दन् ॥६॥

हे कल्याणकारक अश्विनीकुमारहरू हो ! प्रगतिको इच्छाले प्रेरित ऋषिले गायत्री छन्दमा गाएको स्तोत्र तिमीहरू दुईले सुन्यौ। तिमीहरू दुवै नेत्रहीनलाई दृष्टि प्रदान गर्दछौ, त्यसका लागि हामी तिमीहरूको गुणगान गर्दछौं, हाम्रो पनि रहर पूरा होस्।

युवं ह्यास्तं महो रन्युवं वा यन्निरततंसतम्।
ता नो वसू सुगोपा स्यातं पातं नो वृकादघायोः ॥७॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै कुनै साधकलाई मनग्गे दान पनि दिन्छौ र कसैका धनको

शक्ति पूर्ण रूपले छुटाई पनि दिन्छौ। तिमीहरू दुवै हाम्रा असल संरक्षक होओ। दुष्कर्मी तथा ब्वाँसाजस्ता क्रोधी शत्रुहरूबाट हामीलाई जोगाओ।

**मा कस्मै धातमभ्यमित्रिणे नो माकुत्रा नो गृहेभ्यो धेनवो गुः।**
**स्तनाभुजो अशिश्वीः ॥८॥**

कुनै शत्रुहरूसित पनि हाम्रो पराजय नहोस्। आफ्ना दुधले पालनपोषण गर्ने गाई बाछाबाट अलग्गिएर हाम्रो घर नछोड्न्। हाम्रो घर पोषक दुधले सधैँ समृद्ध रहोस्।

**दुहीयन्मित्रधितये युवाकु राये च नो मिमीतं वाजवत्यै।**
**इषे च नो मिमीतं धेनुमत्यै ॥९॥**

तिमीहरूका सहयोगको आशा गर्दै हामीलाई आफन्त पाल्नका लागि धेरै धनसम्पत्ति चाहिएको छ। त्यसैले शक्तिसम्पन्न धन र गाईसहित मनग्गे अन्न हामीलाई देओ।

**अश्विनोरसनं रथमनश्वं वाजिनीवतोः। तेनाहं भूरि चाकन ॥१०॥**

सैन्यशक्तिले सम्पन्न अश्विनीकुमारहरूबाट विनाअश्व नै चल्ने रथ हामीले पायौँ। यसबाट हामी मनग्गे कीर्ति आर्जन गर्ने अभिलाषा गर्दछौँ।

**अयं समह मा तनूह्याते जनाँ अनु। सोमपेयं सुखो रथः ॥११॥**

सुखदायी रथ धनले भरिपूर्ण छ। अश्विनीकुमारहरू सोमपानका लागि याज्ञिकहरूका नजिक यसै रथमा चढेर जान्छन्। यस रथले हामीलाई ख्याति दिन्छ।

**अध स्वप्नस्य निर्विदेऽभुञ्जतश्च रेवतः। उभा ता बस्रि नश्यतः ॥१२॥**

असमर्थलाई खान दिने उदारता नभएका धनीहरू र अल्छ्याइँ गरी बस्ने व्यक्तिलाई देख्दा हामीलाई ज्यादै दिक्क लाग्दछ। तिनीहरूको शीघ्र विनाश सुनिश्चित छ।

## [सूक्त - १२१]

**ऋषि** – कक्षीवान् दैर्घतमस। **देवता** – इन्द्र विश्वेदेवा। **छन्द** – त्रिष्टुप्।

**कदित्था नॄँः पात्रं देवयतां श्रवद्गिरो अङ्गिरसां तुरण्यन्।**
**प्र यदानड्विश आ हर्म्यस्योरु क्रंसते अध्वरे यजत्रः ॥१॥**

मनुष्यलाई संरक्षण प्रदान गर्ने इन्द्रदेव झट्टै देवत्व पद प्राप्त गर्न चाहने अङ्गिरसहरूको प्रार्थना सुन्लान् भन्ने निश्चित छैन। जब स्वीकार गर्दछन् त्यसपछि प्रजाका घरमा हुने यज्ञमा झट्ट पुगेर उनीहरूका अभीष्ट कामनाहरू पूर्ण गरिदिन्छन्।

**स्तम्भीद्ध द्यां स धरुणं प्रुषायदृभुर्वाजाय द्रविणं नरो गोः।**
**अनु स्वजां महिषश्चक्षत व्रां मेनामश्वस्य परि मातरं गोः ॥२॥**

पक्का पनि उनैले द्युलोकलाई स्थिरता प्रदान गरेका हुन्। तेजस्वी रश्मिका प्रकाशक इन्द्रदेव सर्वत्र अन्न उत्पादन गराउन जल बर्साउने माध्यम हुन्। महान् सूर्यदेव आफ्नी कन्या उषादेवीभन्दा पछि प्रकाशित हुन्छन्। शीघ्र गतिशील चन्द्रमाकी पत्नी रात्रिलाई किरणहरूकी माता बनाउँछन्।

**नक्षद्धवमरुणीः पूर्व्यं राट् तुरो विशामङ्गिरसामनु द्यून्।**
**तक्षद्वज्रं नियुतं तस्तम्भद् द्यां चतुष्पदे नर्याय द्विपादे ॥३॥**

असल मानिसलाई सत्कर्ममा प्रेरित गर्ने, आङ्गिरसहरूका ज्ञाता सूर्यदेव नित्य उषालाई प्रकाशमान गराउँदै श्रेष्ठ स्तुतिरूपी वाणीले सम्मानित हुन्छन्। इन्द्रदेव वज्र धारिलो बनाउँछन् र प्राणीको कल्याणका निम्ति दिव्यलोकलाई स्थिरता प्रदान गर्दछन्।

**अस्य मदे स्वर्यं दा ऋतायापीवृतमुस्रियाणामनीकम्।**
**यद्ध प्रसर्गे त्रिककुम्निवर्तदप द्रुहो मानुषस्य दुरो वः ॥४॥**

हे इन्द्रदेव ! प्रार्थनाले प्रशंसित भएर तिमी रात्रिमा लुकेका प्रकाशमय किरणसमूहलाई यज्ञ सम्पादनका लागि प्रकट गर्दछौ। जब तीनै लोकमा सर्वोत्तम इन्द्रदेव युद्धमा तत्पर हुन्छन्, त्यस बेला तिनले विरोधीका लागि पतनको मार्ग खोल्दछन्।

**तुभ्यं पयो यत्पितरावनीतां राधः सुरेतस्तुरणे भुरण्यू।**
**शुचि यत्ते रेक्ण आयजन्त सबर्दुघायाः पय उस्रियायाः ॥५॥**

उत्तम र दुधालु गाईका घिउदुधले तिम्रा लागि मानिसले यज्ञ गरेपछि हे इन्द्रदेव ! तिमी चाँडै क्रियाशील हुन्छौ। तिमीलाई भरणपोषण गर्ने मातापिताजस्ता द्यावापृथिवीमा तिमी नै ऐश्वर्यप्रद श्रेष्ठ उत्पादन क्षमता भएको वर्षा गराउँछौ।

अध प्र जज्ञे तरणिर्ममत्तु प्र रोच्यस्या उषसो न सूरः।
इन्दुर्येभिराष्ट स्वेदुहव्यैः स्रुवेण सिञ्चञ्जरणाभि धाम ॥६॥

सूर्यदेव प्रकाशित भएझैं दुःखनाशक इन्द्रदेव पनि उषाका नजिकै प्रकट हुन्छन्। श्रेष्ठ मधुर पदार्थको हवि प्रदान गर्ने इन्द्रदेवका लागि यज्ञस्थलमा सुरोपात्रले यजमानहरू सोमरस प्रदान गर्दछन्। इन्द्रदेव यस्तै सोमरसले अघाएर खुसी होऊन्।

स्विध्मा यद्वनधितिरपस्यात्सूरो अध्वरे परि रोधना गोः।
यद्ध प्रभासि कृत्व्याँ अनु द्यूननर्विशे पश्विषे तुराय ॥७॥

प्रकाशित सूर्यका किरणका माध्यमबाट मेघले जल वर्षा गर्दाखेरि इन्द्रदेव यज्ञका लागि किरणको अवरोध हटाइदिन्छन्। हे इन्द्रदेव ! तिमी सूर्यका किरणका रूपमा सञ्चार गर्दा गाडीवाल, पशुपालक र गतिशील पुरुषहरू आआफ्ना कार्य पूरा गर्न तयार हुन्छन्।

अष्टा महो दिव आदो हरी इह द्युम्नासाहमभि योधान उत्सम्।
हरिं यत्ते मन्दिनं दुक्षन्वृधे गोरभसमद्रिभिर्वाताप्यम् ॥८॥

हे इन्द्रदेव ! यज्ञकर्ता मानिसले तिम्रो संवर्धनका लागि उत्तम, आनन्दप्रद गाईको दुध मिश्रित र शक्तिप्रद सोम ढुङ्गामा पेलेर तयार गर्दछन्। त्यस बेला विस्तृत दिव्यलोक नै ढाक्ने तिम्रो अश्वरूपी किरण हविरूपी सोमरस लिएर आउँछ। त्यो सोम ग्रहण गरेर वर्षा अवरोधक तत्त्व हटाउँदै तेजस्वी जलधारा तिमी चारैतिर वर्साऊ।

त्वमायसं प्रति वर्तयो गोर्दिवो अश्मानमुपनीतमृभ्वा।
कुत्साय यत्र पुरुहूत वन्वञ्छुष्णमनन्तैः परियासि वधैः ॥९॥

अनेकौंले बोलाइने हे इन्द्रदेव ! तिमी कुत्सको संरक्षण गर्न शुष्ण दानवलाई विभिन्न शस्त्र प्रहार गर। त्यसलाई नाश गरेपछि निर्भय भएर सबै चारै दिशामा घुम्छन्। त्यस आक्रान्तालाई हनन गर्नका लागि तिमी ऋभुले स्वर्गलोकमा ल्याएका ढुङ्गा र फलामले बनेका शस्त्रास्त्र प्रहार गर्छौ।

पुरा यत्सूरस्तमसो अपीतेस्तमद्रिवः फलिगं हेतिमस्य।
शुष्णस्य चित्परिहितं यदोजो दिवस्परि सुग्रथितं तदादः ॥१०॥

वज्रधारी इन्द्रदेवले बादल नष्ट पार्ने शस्त्र प्रहार गरेपछि सूर्यदेव मुक्त भए। हे इन्द्रदेव ! द्युलोक छेकिराखेको शुष्णको बल तिमीले नष्ट गरायौ।

अनु त्वा मही पाजसी अचक्रे द्यावाक्षामा मदतामिन्द्र कर्मन्।
त्वं वृत्रमाशयानं सिरासु महो वज्रेण सिष्वपो वराहुम् ॥११॥

महान् सामर्थ्यले युक्त हे इन्द्रदेव ! सबैतिर व्याप्त रहेका द्युलोक र भूलोकले तिम्रा कार्यप्रति आभार प्रकट गरे। तिमी त्यसबाट प्रोत्साहित भयौ र विशाल वज्रले वृत्रलाई पानीभित्रै पसारिदियौ।

त्वमिन्द्र नर्यो याँ अवो नॄन्तिष्ठा वातस्य सुयुजो वहिष्ठान्।
यं ते काव्य उशना मन्दिनं दाद्वृत्रहणं पार्यं ततक्ष वज्रम् ॥१२॥

हे इन्द्रदेव ! क्रान्तदर्शी उशनाका पुत्रले आनन्दप्रद, वृत्रहन्ता र शत्रुआक्रान्ता वज्र तिम्रा लागि प्रदान गरे। तिमीले त्यसलाई धारिलो बनायौ। भारी वहन गर्न कुशल, रथमा राम्रोसित बाँधिएका र वायुसरिको वेग भएका घोडाहरूले तानिएका रथमा बसेर तिमी मनुष्यका हितचिन्तकहरूलाई संरक्षण प्रदान गर्दछौ।

त्वं सूरो हरितो रामयो नॄन्भरच्चक्रमेतशो नायमिन्द्र।
प्रास्य पारं नवतिं नाव्यानामपि कर्तमवर्तयोऽयज्यून् ॥१३॥

हे इन्द्रदेव ! तिमी प्रकाशमान सूर्यदेवजस्तै मानिसहरूको हितकारक छौ र रस शोषण गर्ने रश्मि प्रकट गर्दछौ। तिम्रा रथका पाङ्ग्रा सधैं गतिमान् रहन्छन्। नौकाबाट तर्न सकिने नब्बे वटा नदीपारि यज्ञविरोधीलाई फ्याँकेर तिमीले विलक्षण तरिकाले यज्ञकार्य सम्पन्न गरायौ।

त्वं नो अस्या इन्द्र दुर्हणायाः पाहि वज्रिवो दुरितादभीके।
प्र नो वाजान्रथ्योऽ३ अश्वबुध्यानिषे यन्धि श्रवसे सूनृतायै ॥१४॥

हे वज्रधारी इन्द्रदेव ! अति प्रयासपूर्वक नष्ट गर्न सकिने दुर्गतिकारक पापकर्मबाट हामीलाई जोगाएर संरक्षित गर। युद्धभूमिमा हाम्रो अति जतन गर। हामीलाई यश, बल र सत्ययुक्त व्यवहारका लागि रथ र अश्वयुक्त ऐश्वर्यसम्पदा प्रदान गर।

मा सा ते अस्मत्सुमतिर्वि दसद्वाजप्रमहः समिषो वरन्त।
आ नो भज मघवन्गोष्वर्यो मंहिष्ठास्ते सधमादः स्याम ॥१५॥

स्तुति गर्न योग्य सामर्थ्यवान् हे इन्द्रदेव ! हाम्रा जीवनमा तिम्रा विवेकबुद्धिको कहिल्यै अभाव नहोस्। विवेकबुद्धिले हामीले सबै खालका अन्न र धन आर्जन गर्न सकौं। हे श्रेष्ठ ऐश्वर्यसम्पन्न इन्द्रदेव ! हामीलाई पशुधनले परिपूर्ण गर र तिम्रो महिमा बढाउने हामी सबै जना एकैसाथ रहेर आनन्दित होऔं।

[सूक्त - १२२]

ऋषि – कक्षीवान् दैर्घतमस। देवता – इन्द्र विश्वेदेवा। छन्द – त्रिष्टुप् विराट्।

प्र वः पान्तं रघुमन्यवोऽन्धो यज्ञं रुद्राय मीढुषे भरध्वम्।
दिवो अस्तोष्यसुरस्य वीरैरिषुध्येव मरुतो रोदस्योः ॥१॥

हे क्रोधविहीन ऋत्विक्हरू हो ! तिमीहरू हर्षप्रदायक रुद्रदेवलाई अन्नरूपी आहुति चढाओ। जसरी धनुर्धारीले बाणद्वारा शत्रुपक्षको विनाश गर्दछ, उसै गरी दिव्यलोकबाट आएर असुरता संहार गर्ने गर। हामी दिव्यलोक र भूलोकका बीचमा शूरवीरहरूका साथ वास गर्ने मरुत्गणलाई प्रार्थना गर्दछौं।

पत्नीव पूर्वहूतिं वावृधध्या उषसानक्ता पुरुधा विदाने।
स्तरीर्नात्कं व्युतं वसाना सूर्यस्य श्रिया सुदृशी हिरण्यैः ॥२॥

धर्मपत्नीले पतिलाई सहयोग गरेझैं उषादेवी र रात्रिले हाम्रा पहिलेका प्रार्थनाहरू बुझेर हामीलाई प्रगतिका मार्गमा अग्रसर गराऊन्। अन्धकार नष्ट गर्ने सूर्यदेवजस्तै, स्वर्णिम वस्त्रले सुसज्जित, सौन्दर्यले सुशोभित र अति रूपवती उषादेवीले हामीलाई उन्नतिका शिखरमा पुऱ्याऊन्।

ममत्तु नः परिज्मा वसर्हा ममत्तु वातो अपां वृषण्वान्।
शिशीतमिन्द्रापर्वता युवं नस्तन्नो विश्वे वरिवस्यन्तु देवाः ॥३ ॥

अन्धकार नाश गरेर सर्वत्र घुम्दै दिन निम्त्याउने सूर्यदेवले हामीलाई सुख प्रदान गरुन्। वायुदेवले जल वर्षा गरेर आनन्दित गरुन्। इन्द्रले मेघ र हामीलाई स्वच्छ पारुन्। सबै देवताले हामीलाई ऐश्वर्यसम्पन्न गराऊन्।

उत त्या मे यशसा श्वेतनायै व्यन्ता पान्तौशिजो हुवध्यै।
प्र वो नपातमपां कृणुध्वं प्र मातरा रास्पिनस्यायोः ॥४॥

उशिक्का पुत्र कक्षीवान्ले यश र तेज प्राप्त गर्नका लागि सर्वत्र गमनशील, पालनकर्ता अश्विनीकुमारलाई प्रार्थना गरे। हे मनुष्यहरू हो ! सत्कर्मका संरक्षक अग्निदेवलाई उत्तम प्रार्थना गर। स्तुति गर्नेहरूले मातापिताजस्ता द्यावापृथिवीलाई प्रार्थना गर।

आ वो रुवण्युमौशिजो हुवध्यै घोषेव शंसमर्जुनस्य नंशे।
प्र वः पूष्णे दावन आँ अच्छा वोचेय वसुतातिमग्नेः ॥५॥

हे देवताहरू हो ! घोषा नामकी स्त्रीले रोग निको पार्न अश्विनीकुमारलाई बोलाएझैं उशिक् पुत्र कक्षीवान्ले दुःख मेटाउन तिमीहरूलाई बोलाउन ठूलो स्वरमा स्तोत्र पाठ गर्दछन्। तिमीहरूसँगै धनदाता पूषादेवलाई पनि उनले प्रार्थना गर्दछन्। सम्पदा प्राप्त गर्नका लागि अग्निदेवलाई पनि उनी प्रार्थना गर्छन्।

श्रुतं मे मित्रावरुणा हवेमोत श्रुतं सदने विश्वतः सीम्।
श्रोतु नः श्रोतुरातिः सुश्रोतुः सुक्षेत्रा सिन्धुरद्भिः ॥६॥

हे मित्र र वरुणदेवहरू हो ! तिमीहरू दुवै हाम्रो निवेदन सुन। यज्ञमण्डपमा चारैतिर गाइएका प्रार्थना पनि सुन। सुविख्यात, दानशील, जलवर्षक देवताहरूले हाम्रो प्रार्थना सुनेर जलराशिले हाम्रा खेतबारी सिंचाइ गरुन्।

स्तुषे सा वां वरुण मित्र रातिर्गवां शता पृक्षयामेषु पज्रे।
श्रुतरथे प्रियरथे दधानाः सद्यः पुष्टिं निरुन्धानासो अग्मन् ॥७॥

हे मित्र र वरुणदेवहरू हो ! तिमीहरूलाई हामी प्रार्थना गर्दछौं। तीव्र वेगमा अश्व कुदाउने शूरवीरले नै सङ्ग्रामभूमिबाट असङ्ख्य गाईरूपी धन उपलब्ध गर्न पाउँछ। दुवै उसै विख्यात एवं प्रिय रथमा तुरुन्त यहाँ आओ र हामीलाई समृद्ध गराओ।

अस्य स्तुषे महिमघस्य राधः सचा सनेम नहुषः सुवीराः ।
जनो यः पज्रेभ्यो वाजिनीवानश्वावतो रथिनो मह्यं सूरिः ॥८॥

घोडा र रथले सजिएका योद्धालाई हाम्रो संरक्षणका लागि प्रेरित गर्ने महान् वैभवशाली एवं सामर्थ्यवान् मानिसका धनलाई सबैले प्रशंसा गर्दछन्। हामी श्रेष्ठ शूरतासम्पन्न मानिसहरू जति छौं, सबै एकै ठाउँमा सङ्गठित होऔं।

जनो यो मित्रावरुणावभिध्रुगपो न वां सुनोत्यक्ष्णयाध्रुक्।
स्वयं स यक्ष्मं हृदये नि धत्त आप यदीं होत्राभिर्ऋतावा ॥९॥

हे मित्र र वरुणदेवहरू हो ! तिमीहरूसित विनाकारण द्वेष गर्ने, सोमरस निष्पादन नगर्ने, यज्ञीय भावना नभएका, कुमार्गमा हिंड्ने मानिसहरू अनेकौं किसिमका मानसिक एवं हृदयका रोगले पीडित हुन्छन्। सत्य मार्गमा हिंड्दै मन्त्र उच्चारण गर्दै यज्ञ सम्पन्न गर्नेहरूले सधैं तिमीहरूको कृपा प्राप्त गर्दछन्।

स व्राधतो नहुषो दंसुजूतः शर्धस्तरो नरां गूर्तश्रवाः ।
विसृष्टरातिर्याति बाळ्हसृत्वा विश्वासु पृत्सु सदमिच्छूरः ॥१०॥

हे देवताहरू हो ! यजन गर्ने साधकहरू अश्वले युक्त होऊन्। शत्रुका लागि भयङ्कर विनाशकर्ता र अति तेजस्वी होऊन्। उनीहरू मगन्तेप्रति उदार र महान् बलशाली होऊन्। त्यस्तै व्यक्ति युद्धमा सामर्थ्यवान् शत्रुलाई विनाश गर्दै अगाडि सर्दछन्।

अध ग्मन्ता नहुषो हवं सूरेः श्रोता राजानो अमृतस्य मन्द्राः ।
नभोजुवो यन्निरवस्य राधः प्रशस्तये महिना रथवते ॥११॥

हे सर्वत्र आकाशमा डुल्ने देवताहरू हो ! तिमीहरू आफ्ना बलबुताले अमङ्गलकारी दुष्टको सम्पत्ति खोसेर प्रशंसायोग्य उत्तम रथ चलाउने शूरवीरलाई हस्तान्तरण गर्दछौ। तेजस्वी, हर्षदायक र अमृतमय यज्ञतर्फ प्रेरित गराउने हे देवताहरू हो ! मानिसको स्तुति सुनेर तिमीहरू यहाँ आओ।

एतं शर्धं धाम यस्य सूरेरित्यवोचन्दशतयस्य नंशे।
द्युम्नानि येषु वसुताती रारन्विश्वे सन्वन्तु प्रभृथेषु वाजम् ॥१२॥

दस वटा चमस पात्रमा सोमरस राखेर बोलाउने स्तुतिकर्ताको सामर्थ्य देवताहरूले बढाइदिन्छन् भनिन्छ। तेजयुक्त ऐश्वर्यले भएका देवताहरू हाम्रा यज्ञमा आएर हविष्यान्न सेवन गरुन्।

मन्दामहे दशतयस्य धासेर्द्विर्यत्पञ्च बिभ्रतो यन्त्यन्ना।
किमिष्टाश्व इष्टरश्मिरेत ईशानासस्तरुष ऋञ्जते नॄन् ॥१३॥

दस वटा चमस पात्रमा राखिएको सोमरूपी हविष्यान्न लिएर आउनेछन्। ती पात्रहरूमा राखिएको सोमरसरूपी अन्नले हामी प्रशंसित छौं। अश्वलाई लगाम लगाएर नियन्त्रण गर्न निपुण, शत्रुसंहारक देवताहरू छँदाछँदै श्रद्धालु मानिसलाई दुःख दिन कसले पो सक्ला र ? अतः कसैले पनि उनीहरूको अहित गर्न सक्दैन।

हिरण्यकर्णं मणिग्रीवमर्णस्तन्नो विश्वे वरिवस्यन्तु देवाः ।
अर्यो गिरः सद्य आ जग्मुषीरोस्राश्चाकन्तूभयेष्वस्मे ॥१४॥

कानमा सुनका आभूषण र कण्ठमा मणि लगाएका सम्पूर्ण देवताहरूले हामीलाई असल सन्तान प्रदान गरुन्। यज्ञमा हामीले उच्चारण गरेको प्रार्थना र घिउको आहुति यी श्रेष्ठ देवताहरू भट्टै ग्रहण गरुन्।

चत्वारो मा मशर्शारस्य शिश्वस्त्रयो राज्ञ आयवसस्य जिष्णोः ।
रथो वां मित्रावरुणा दीर्घाप्साः स्यूमगभस्तिः सूरो नाद्यौत् ॥१५॥

पराक्रमी मशर्शार राजाका चार पुत्र र अन्नका अधिपति आयवस राजाका तीन पुत्रले हामीलाई पीडित गराएका छन्। हे मित्र र वरुणदेव ! तिमीहरू दुवैका कल्याणकारी विशाल रश्मियुक्त रथ सूर्यवत्झैं आलोकित होऊन्।

[सूक्त - १२३]

ऋषि - कक्षीवान् दैर्घतमस। देवता - उषा। छन्द - त्रिष्टुप्।

**पृथू रथो दक्षिणाया अयोज्यैनं देवासो अमृतासो अस्थुः।**
**कृष्णा दुदस्थादर्या३ विहायाश्चिकित्सन्ती मानुषाय क्षयाय ॥१॥**

उषादेवीको कुशल र विस्तृत रथ घोडा नारेर तयार गरिएको छ र त्यसमा अमर देवगण आएर बसेका छन्। विशिष्ट तरिकाले प्रकाशित उषादेवी मानिसलाई सुखद निवास दिनका लागि प्रयत्नशील भएर डर लाग्दो अन्धकारभन्दा माथि आएर प्रकट भइन्।

**पूर्वा विश्वस्माद्भुवनादबोधि जयन्ती वाजं बृहती सनुत्री।**
**उच्चा व्यख्यद्युवतिः पुनर्भूरोषा अगन्प्रथमा पूर्वहूतौ ॥२॥**

सबै प्राणीभन्दा पहिले उषादेवी जाग्दछिन्। मनग्गे धन दान गर्ने उषादेवी ऐश्वर्य उत्पन्न गराउँछिन्। बारम्बार आउने चिरयुवा उषादेवी यज्ञको सर्वप्रथम स्थानमा विराजमान हुन्छिन् र अग्लो ठाउँबाट सबैलाई हेर्दछिन्।

**यदद्य भागं विभजासि नृभ्य उषो देवि मर्त्यत्रा सुजाते।**
**देवो नो अत्र सविता दमूना अनागसो वोचति सूर्याय ॥३॥**

हे कुलीन उषादेवी ! तिमी मनुष्यको पालनकर्त्री हौ, त्यसैले मानिसका लागि धनको उपयुक्त भाग प्रदान गर्दछ्यौ। त्यस बेला दानप्रति प्रेरित गर्ने सूर्यदेवका सामु हामीलाई पापरहित बनाऊ।

**गृहङ्गृहमहना यात्यच्छा दिवेदिवे अधि नामा दधाना।**
**सिषासन्ती द्योतना शश्वदागादग्रमग्रमिद्भजते वसूनाम् ॥४॥**

उषादेवी हविको भाग ग्रहण गर्नका लागि प्रत्येक दिन आउँछिन्। कीर्ति धारण गरेकी उषादेवी सधैं प्रत्येक घरमा जान्छिन् र धनको असल अंश ग्रहण गर्दछिन्।

**भगस्य स्वसा वरुणस्य जामिरुषः सूनृते प्रथमा जरस्व।**
**पश्चा स दघ्या यो अघस्य धाता जयेम तं दक्षिणया रथेन ॥५॥**

हे सुभाषिणी उषादेवी ! तिमी भगदेव र वरुणदेवकी बहिनीजस्तै हुनाले देवताहरूमा सबैभन्दा पहिले स्तुति गर्न योग्य छौ। पापी शत्रुलाई हामी पक्रन सकौं र तिमीले कुशलतापूर्वक हाँकेको रथले तिनीहरूलाई परास्त गराऔं।

**उदीरतां सूनृता उत्पुरन्धीरुदग्नयः शुशुचानासो अस्थुः।**
**स्पार्हा वसूनि तमसापगूह्ळाविष्कृण्वन्त्युषसो विभातीः ॥६॥**

हाम्रा मुखले स्तोत्र गाओस्। सत्कर्मतिर तिखो बुद्धि प्रेरित गरौं। बालिएको अग्नि सधैं बलिरहोस्। तेजस्वी उषाले अन्धकारमा छोपिएका धन प्रकट गराऊन्।

**अपान्यदेत्यभ्य१न्यदेति विषुरूपे अहनी सं चरेते।**
**परिक्षितोस्तमो अन्या गुहाकरद्यौदुषाः शोशुचता रथेन ॥७॥**

विपरीत रूपरङ्ग भएका रात्रि र उषादेवी क्रमशः आउँछन् र जान्छन्। एउटी गएपछि अर्की आउँछिन्। यी भ्रमणशीलहरूमा एउटी रात्रिले सबैलाई अन्धकारमा छोप्दछिन् र अर्की उषादेवीले प्रकाशयुक्त तेजरूपी रथले सबैलाई प्रकाशित गर्दछिन्।

**सदृशीरद्य सदृशीरिदु श्वो दीर्घं सचन्ते वरुणस्य धाम।**
**अनवद्यास्त्रिंशतं योजनान्येकैका क्रतुं परि यन्ति सद्यः ॥८॥**

आजभैं उषाहरू भोलि पनि आउँछन्। पवित्र उषाहरू वरुणदेवका पवित्र स्थानमा निकै बेर रहन्छन्। एउटी उषादेवीले तीस योजनको परिक्रमा गर्दै निश्चित समयका कर्ममा प्रेरणा दिने सूर्यदेवका अगाडि यिनीहरू हिँड्दछिन्।

**जानत्यह्नः प्रथमस्य नाम शुक्रा कृष्णादजनिष्ट श्वितीची।**
**ऋतस्य योषा न मिनाति धामाहरहर्निष्कृतमाचरन्ती ॥९॥**

दिनको प्रारम्भ काललाई चिनेकी, गोरो वर्णकी तेजस्विनी उषा काली रात्रिका काला अन्धकारबाट उत्पन्न हुन्छिन्। स्त्रीरूपी उषा सत्यव्रत नत्यागीकन प्रतिदिन निश्चित बेलामा आउँछिन् र नियमपूर्वक रहन्छिन्।

कन्येव तन्वा३ शाशदानाँ एषि देवि देवमियक्षमाणम्।
संस्मयमाना युवतिः पुरस्तादाविर्वक्षांसि कृणुषे विभाती ॥१०॥

हे उषादेवी ! शरीर प्रदर्शन गर्ने कन्याजस्तै देखिएकी तिमी अभीष्ट पूरा गर्ने पतिरूपी सूर्यदेवका समीप जान्छ्यौ। नवयुवतीझैं मुस्काउँदै कान्तिमती भएर आफ्ना प्रकाशले किरणरूपी वक्षस्थल प्रकट रूपमा प्रदर्शन गराउँछ्यौ।

सुसङ्काशा मातृमृष्टेव योषाविस्तन्वं कृणुषे दृशे कम्।
भद्रा त्वमुषो वितरं व्युच्छ न तत्ते अन्या उषसो नशन्त ॥११॥

आफ्नै आमाले सिँगारेकी तरुनी छोरीजस्तै सुन्दर उषादेवी आफ्ना किरणरूपी शारीरिक अङ्गहरू मानौँ देखाउनकै लागि प्रकट गर्दै छिन्। हे उषादेवी ! तिमी मनुष्यको कल्याण गर्दै व्यापक क्षेत्रमा प्रकाशित होऊ। अन्य उषाहरू तिमीसमान तेजस्वी हुँदैनन्।

अश्वावतीर्गोमतीर्विश्ववारा यतमाना रश्मिभिः सूर्यस्य।
परा च यन्ति पुनरा च यन्ति भद्रा नाम वहमाना उषासः ॥१२॥

अश्व र गाईहरूले युक्त, आदरयोग्य, सूर्यदेवका किरण अन्धकार हटाउन प्रयत्नशील छन्। हितकारी यश धारण गर्ने उषाहरू पर गएझैं देखिए तापनि त्यहीँ आउँछन्।

ऋतस्य रश्मिमनुयच्छमाना भद्रम्भद्रं क्रतुमस्मासु धेहि।
उषो नो अद्य सुहवा व्युछास्मासु रायो मघवत्सु च स्युः ॥१३॥

हे उषादेवी ! सूर्यदेवको रश्मि अनुकूल रहँदा तिमी हाम्रा मनलाई हितकारी कर्ममा प्रेरित गर। आह्वान गरेपछि तिमी हाम्रा सामु प्रकट होऊ। हामी र ऐश्वर्यवान्हरूलाई मनग्गे मात्रामा धनसम्पदा प्रदान गर।

[सूक्त – १२४]

ऋषि – कक्षीवान् दैर्घतमस। दवता – उषा। छन्द – त्रिष्टुप्।

उषा उच्छन्ती समिधाने अग्ना उद्यन्त्सूर्य उर्विया ज्योतिरश्रेत्।
देवो नो अत्र सविता न्वर्थं प्रासावीद् द्विपत्प्र चतुष्पदित्यै ॥१॥

अग्नि प्रदीप्त भएपछि उषादेवी अन्धकार नाश गर्दै उदाइरहेकेका सूर्यको जस्तै अत्यन्त तेज धारण गर्दछिन्। सूर्यदेवले हामीलाई उपयोगी धन दिन्छन् र मनुष्य तथा अन्य प्राणीलाई हिँड्नका लागि मार्ग खुला गरिदिन्छन्।

अमिनती दैव्यानि व्रतानि प्रमिनती मनुष्या युगानि।
ईयुषीणामुपमा शश्वतीनामायतीनां प्रथमोषा व्यद्यौत् ॥२॥

उषादेवी नियमअनुशासन पालन गर्नेगराउने गर्दै मानिसको आयु निरन्तर कम गर्छिन्। विगतमा निरन्तर आएका उषाहरूका अन्त्यमा र भविष्यमा आउने उषाहरूका प्रारम्भमा यति बेला यी उषा प्रकट हुन्छिन्।

एषा दिवो दुहिता प्रत्यदर्शि ज्योतिर्वसाना समना पुरस्तात्।
ऋतस्य पन्थामन्वेति साधु प्रजानतीव न दिशो मिनाति ॥३॥

स्वर्गलोककी कन्याजस्ती उषादेवी प्रकाशरूपी वस्त्र धारण गर्ने, भव्य मन भएकी र प्रतिदिन पूर्व दिशाबाट आउने गरेकी देखिन्छिन्। सत्यको मार्गमा हिँड्ने विदुषी नारीझैं दिशाहरूलाई अवरोध नगरीकन यी उषादेवी जान्छिन्।

उपो अदर्शि शुन्ध्युवो न वक्षो नोधा इवाविरकृत प्रियाणि।
अद्मसन्न ससतो बोधयन्ती शश्वत्तमागात्पुनरेयुषीणाम् ॥४॥

शुद्ध पवित्र वक्षस्थलजस्तै उषादेवी नजिकै देखिँदै छिन्। नयाँ वस्तु निर्माण गरेझैं उषादेवीले आफ्ना किरणरूपी अङ्गहरूलाई प्रकट गरेकी छन्। सुतेका परिवारलाई जगाउने गृहिणीजस्तै आगामी उषाहरूमध्येकी सर्वप्रथम यी उषा फेरि आइन्।

पूर्वे अर्धे रजसो अप्त्यस्य गवां जनित्र्यकृत प्र केतुम्।
व्यु प्रथते वितरं वरीय ओभा पृणन्ती पित्रोरुपस्था ॥५॥

विशाल अन्तरिक्षको पूर्वी भागमा रश्मि उत्पन्न गराउने उषादेवीले प्रकाशरूपी ध्वजा फर्फराइन्। द्युलोक र भूलोकरूपी मातापितासित रहेर दुवै लोकलाई प्रकाशयुक्त पार्दै यी उषादेवी विशिष्ट तेजस्वी प्रकाशले अन्तरिक्षलाई परिपूर्ण गराउँछिन्।

एवेदेषा पुरुतमा दृशे कं नाजामिं न परि वृणक्ति जामिम्।
अरेपसा तन्वा३ शाशदाना नार्भादीषते न महो विभाती ॥६॥

निरन्तर विस्तृत भइरहने उषाले विरोधीलाई आफ्ना प्रकाशको आनन्ददायी सुखबाट वञ्चित गराइनन् र आत्मीयजनलाई पनि त्यसबाट वञ्चित गर्न सक्दिनन्। प्रकाशरूपी निर्दोष शरीरले प्रकाशित हुने उषादेवी सानातिनाबाट टाढा हुन नसकेझैं ठूलालाई पनि त्याग्न सक्दिनन् र सानाठूलो सबैलाई प्रकाशित गर्दछिन्।

अभ्रातेव पुंस एति प्रतीची गर्तारुगिव सनये धनानाम्।
जायेव पत्य उशती सुवासा उषा हस्रेव नि रिणीते अप्सः ॥७॥

दाजुभाइविनाकी चेली निराश्रित भएपछि आमाबाबुसित गएझैं र धनको अंश पाउनका लागि निराश्रित विधवा न्यायालयमा गएझैं उत्तम वस्त्र धारण गरेर सूर्यरूपी पतिलाई भेट्ने इच्छाले उषादेवी मुस्कुराउँदै आफ्नो किरणरूपी सौन्दर्य प्रकट गर्न लागिन्।

स्वसा स्वस्रे ज्यायस्यै योनिमारैगपैत्यस्याः प्रतिचक्ष्येव।
व्युच्छन्ती रश्मिभिः सूर्यस्याञ्ज्यङ्क्ते समनगा इव व्राः ॥८॥

बहिनीले दिदीलाई खाली ठाउँ दिएझैं रात्रिरूपी बहिनीले आफ्नी दिदी उषादेवीलाई ठाउँ दिँदै अर्कैतिर हिँडिन्। सूर्यदेवका रश्मिले अन्धकार हट्यो र यी उषादेवी उत्सवमा जाने महिलाजस्तै देखिइन्। उनले व्यवस्थित किरणसमूहमा स्वरूप प्रकट गरिन्।

आसां पूर्वासामहसु स्वसॄणामपरा पूर्वामभ्येति पश्चात्।
ताः प्रत्नवन्नव्यसीर्नूनमस्मे रेवदुच्छन्तु सुदिना उषासः ॥९॥

उषारूपी दिदीबहिनीहरू गइरहँदा एकपछि अर्की अन्तिम नयाँ उषादेवीको लर्को लाग्दछ। ती उषादेवीले पहिलेझैं हाम्रा लागि निश्चय पनि प्रचुर धनयुक्त श्रेष्ठ दिवसका लागि प्रकाशित गरुन्।

प्र बोधयोषः पृणतो मघोन्यबुध्यमानाः पणयः ससन्तु।
रेवदुच्छ मघवद्भ्यो मघोनि रेवत्स्तोत्रे सूनृते जारयन्ती ॥१०॥

हे धनशालिनी उषादेवी ! तिमी दाताहरूलाई जगाऊ। नजाग्ने लोभी व्यापारी सुतून्। वैभवशालिनी उषाले धनवान्‌का निमित्त धन दिनुका साथै यज्ञीय भावनाको प्रेरणा दिऊन्। हे सुभाषिणी उषादेवी ! तिमी सम्पूर्ण प्राणीको आयु कम गर्दछ्यौ। तिमी स्तोताहरूका निम्ति अपार वैभवले युक्त भएर प्रकाशमान होऊ।

अवेयमश्वैद्युवतिः पुरस्ताद्युङ्क्ते गवामरुणानामनीकम्।
वि नूनमुच्छादसति प्र केतुर्गृहंगृहमुप तिष्ठाते अग्निः ॥११॥

तरुणी स्त्रीजस्तै उषादेवी पूर्व दिशामा प्रकट हुँदै छिन्। यिनले किरणरूपी रातो अश्व आफ्ना रथमा जोतेकी छिन्। उषादेवी निश्चित र विशिष्ट रूपमा प्रकट हुन्छिन्। उनका प्रकाशरूपी ध्वजाको आरोहण हुँदा घरघरमा यज्ञको अग्नि प्रज्वलित हुन्छ।

उत्ते वयश्चिद्वसतेरपप्तन्नरश्च ये पितुभाजो व्युष्टौ।
अमा सते वहसि भूरि वाममुषो देवि दाशुषे मर्त्याय ॥१२॥

उषादेवी प्रकट हुँदाखेरि पक्षीले आआफ्नो गुण त्याग्छन्। मानिसहरू अन्नको खोजी लाग्छन्। हे उषादेवी ! यज्ञ र दान गर्ने गृहस्थीहरूलाई प्रचुर धनसम्पदा प्रदान गर।

अस्तोढ्वं स्तोम्या ब्रह्मणा मे ऽवीवृधध्वमुशतीरुषासः।
युष्माकं देवीरवसा सनेम सहस्रिणं च शतिनं च वाजम् ॥१३॥

हे स्तुतियोग्य उषाहरू हो ! हाम्रा स्तुतिले तिमीहरूको प्रार्थना सम्पन्न हुँदै छ। प्रगतिमा लाग्ने प्रजालाई उषाहरूले समृद्ध गराऊन्। हे देवत्वसम्पन्न उषाहरू हो ! तिमीहरूका संरक्षण साधनले हामी सयौं वा हजारौं धनधान्य र बलवर्गत आर्जन गरौं।

[सूक्त - १२५]

ऋषि - कक्षीवान् दैर्घतमस। देवता - स्वनय दानस्तुति। छन्द - त्रिष्टुप् जगती।

प्राता रत्नं प्रातरित्वा दधाति तं चिकित्वान्प्रतिगृह्या नि धत्ते।
तेन प्रजां वर्धयमान आयू रायस्पोषेण सचते सुवीरः ॥१॥

प्रभात कालीन सूर्यदेव स्वास्थ्यप्रद पोषक तत्त्व मनुष्यलाई दिन्छन्। ज्ञानी मानिस यस तथ्यबाट

परिचित हुन्छन्। त्यसैले उनीहरू सूर्योदयभन्दा पहिले नै उठेर रश्मि मिसिएका प्राणतत्त्वरूपी रत्न लाभ गरेर कृतकृत्य हुन्छन्। त्यसबाट मानिसले दीर्घायु प्राप्त गरेर सन्तान लाभले गर्दै धनसम्पदा र स्वस्थ जीवन प्राप्त गर्दछन्।

**सुगुरसत्सुहिरण्यः स्वश्वो बृहदस्मै वय इन्द्रो दधाति।**
**यस्त्वायन्तं वसुना प्रातरित्वो मुक्षीजयेव पदि मुत्सिनाति॥२॥**

दानी मानिसले बिहान उठ्नासाथ मगन्तेलाई डोरीले पैतालादेखि शिरसम्म बाँधेजस्तै पारेर अपार धन दिन्छ। यस्तो दानी मानिस राम्रा गाई, घोडा र सुनले भरिपूर्ण हुन्छ। यिनलाई इन्द्रदेवले अन्न, धन आदि प्रदान गर्दछन्।

**आयमद्य सुकृतं प्रातरिच्छन्निष्टेः पुत्रं वसुमता रथेन।**
**अंशोः सुतं पायय मत्सरस्य क्षयद्वीरं वर्धय सूनृताभिः॥३॥**

हे देवताहरू हो! धनले सम्पन्न, यज्ञ संरक्षक र श्रेष्ठ कर्तव्य निर्वाह गर्ने पुत्र प्राप्त होस् भनेर आज प्रातः हामी रथमा तिमीहरूकहाँ आएका छौं। तिमीहरू सुखदायक छौ। तयार गरिएको सोमरस ग्रहण गर र वीरलाई आश्रय दिँदै हामीलाई शुभ आशीर्वादले मङ्गल गर।

**उपक्षरन्ति सिन्धवो मयोभुव ईजानं च यक्ष्यमाणं च धेनवः।**
**पृणन्तं च पपुरिं च श्रवस्यवो घृतस्य धारा उप यन्ति विश्वतः॥४॥**

हालै वा भविष्यमा यज्ञ गर्ने वा यज्ञको विचार गर्नेहरूका लागि सुखद नदी बग्दछ। सबैका लागि कल्याणकारी र सबैलाई सम्पन्न गराउने याजकलाई अन्नले समृद्ध पार्ने गाईले घिउको धारा प्रदान गर्दछ।

**नाकस्य पृष्ठे अधि तिष्ठति श्रितो यः पृणाति स ह देवेषु गच्छति।**
**तस्मा आपो घृतमर्षन्ति सिन्धवस्तस्मा इयं दक्षिणा पिन्वते सदा॥५॥**

आफ्ना आश्रितजनलाई धनधान्य र स्वर्गीय सुखले परिपूर्ण गराउनेहरू देवत्व पद प्राप्त गरेर प्रतिष्ठित हुन्छन्। दानीका लागि प्राणजस्तो बनेर जल प्रवाहित भइदिन्छ र पृथ्वीले तिनीहरूका लागि अन्नको भण्डार पर्याप्त प्रदान गर्छ।

**दक्षिणावतामिदिमानि चित्रा दक्षिणावतां दिवि सूर्यासः।**
**दक्षिणावन्तो अमृतं भजन्ते दक्षिणावन्तः प्र तिरन्त आयुः॥६॥**

सार्थक दान दाताले विलक्षण उपलब्धि प्राप्त गर्छन्। दिव्य लोकबाट सूर्यदेव उनैका लागि स्वास्थ्य प्रदान गर्दछन्। दान दाताले अमर पद प्राप्त गर्दछन्। प्रसन्न दानीप्रति दानको भावना बढ्छ र दाताको आयु वृद्धि होस् भन्ने शुभ कामना प्राप्त हुन्छ।

**मा पृणन्तो दुरितमेन आरन्मा जारिषुः सूरयः सुव्रतासः।**
**अन्यस्तेषां परिधिरस्तु कश्चिदपृणन्तमभि सं यन्तु शोकाः॥७॥**

यज्ञ आदि शुभकर्म सम्पन्न गर्ने र मनुष्यलाई कल्याणरूपी दानले सन्तुष्ट गर्छ। उनलाई दुःख र पापबाट जोगाऔं। ज्ञानसाधक र यमनियम आदि व्रत व्यावहारिक जीवनमा प्रयोग गर्ने मानिसलाई बुढ्यौलीले चाँडै गाँज्नेछैन। त्यसको विपरीत पापमा संलिप्त, यज्ञ आदि हविद्वारा देवतालाई सन्तुष्ट नगर्ने र सत्कर्मले हीनलाई मानसिक चिन्ता र शोक सन्तापले सताउनेछन्।

[सूक्त - १२६]

**ऋषि** - स्वनय रोमशा। **देवता** - स्वनय भावयव्य रोमशा। **छन्द** - त्रिष्टुप् अनुष्टुप्।

**अमन्दान्त्सोमान्प्र भरे मनीषा सिन्धावधि क्षियतो भाव्यस्य।**
**यो मे सहस्रममिमीत सवानतूर्तो राजा श्रव इच्छमानः॥१॥**

हिंसा आदि कष्टबाट मुक्त भव्य राजाले कीर्तिको कामना गर्दै हाम्रो यज्ञ सम्पन्न गराए। सिन्धु नदीका किनारमा बस्ने उनै राजाका लागि हामी ज्ञानले पूर्ण स्तोत्र विवेक र बुद्धिका साथ उच्चारण गर्दछौं।

**शतं राज्ञो नाधमानस्य निष्काञ्छतमश्वान्प्रयतान्त्सद्य आदम्।**
**शतं कक्षीवाँ असुरस्य गोनां दिवि श्रवोऽजरमा ततान॥२॥**

कक्षीवान्ले स्तोता र धनदाता राजासित सय स्वर्णमुद्रा, सय वेगशील अश्व र सय असल गोरु लिए। यसबाट ती राजाको कीर्ति स्वर्गलोकमा निर्बाध रूपले फैलियो।

उप मा श्यावाः स्वनयेन दत्ता वधूमन्तो दश रथासो अस्थुः।
षष्टिः सहस्रमनु गव्यमागात्सनत्कक्षीवाँ अभिपित्वे अह्नाम् ॥३॥

स्वनयले दिएको उत्तम जातको घोडा र उत्तम स्त्रीसहित दस रथहरू हामीकहाँ आएका छन्। दिनको सुरुमा राजासित कक्षीवान्ले साठी हजार गाईहरू प्राप्त गरे।

चत्वारिंशद्दशरथस्य शोणाः सहस्रस्याग्रे श्रेणिं नयन्ति।
मदच्युतः कृशनावतो अत्यान्कक्षीवन्त उदमृक्षन्त पज्राः ॥४॥

हजारौं पङ्क्तिभन्दा अघि दस वटा रथ चालीस घोडाले लैजान्छन्। अन्नसहितको घाँस खाएर बलिया भएका, सुनका गहनाले भरिभराउ, मद चुहाउने घोडा कक्षीवान्ले आफ्ना वशमा गरेका छन्।

पूर्वामनु प्रयतिमाददे वस्त्रीन्युक्ताँ अष्टावरिधायसो गाः।
सुबन्धवो ये विश्या इव व्रा अनस्वन्तः श्रव ऐषन्त पज्राः ॥५॥

हे अन्न आदिले पुष्ट, श्रेष्ठ आचरण भएका बन्धुहरू हो ! तिम्रा लागि हामीले चार, चार र तीन अगणित गाईसहित प्रथम अनुदानका रूपमा प्राप्त गर्‍यौं। सबै प्रेमपूर्वक रहने प्रजाको परिवारझैं रथले युक्त भएर कल्याणको कामना गर्दछन्।

आगधिता परिगधिता या कशीकेव जङ्गहे।
ददाति मह्यं यादुरी याशूनां भोज्या शता ॥६॥

मेरी सहधर्मिणीले मेरा लागि अनेकौं ऐश्वर्ययुक्त भोग्यपदार्थ उपलब्ध गराउँछिन्। यी सधैं साथमा रहने, गुणी मेरी सहस्वामिनी हुन्।

उपोप मे परा मृश मा मे दभ्राणि मन्यथाः।
सर्वाहमस्मि रोमशा गन्धारीणामिवाविका ॥७॥

हे पतिदव ! तिमी बारम्बार आएर मेरो स्पर्श गर, मेरो कार्य अन्यथा नठान। रौंले भरिएका गान्धारका भेडाझैं गुणले भरिपूर्ण हुँदै म पाको बनूँ।

[सूक्त - १२७]

ऋषि - परुच्छेप दैवोदासि। देवता - अग्नि। छन्द - अत्यष्टि अतिधृति।

अग्निं होतारं मन्ये दास्वन्तं वसुं सूनुं सहसो जातवेदसं विप्रं न जातवेदसम्।
य ऊर्ध्वया स्वध्वरो देवो देवाच्या कृपा। घृतस्य विभ्राष्टिमनु वष्टि शोचिषाजुह्वानस्य सर्पिषः ॥१॥

दैवी गुणसम्पन्न, श्रेष्ठ कर्मका सम्पादक, देवताका नजिक जाने, ऊर्ध्वगामी ज्वालाले सन्दीप्त र विस्तारयुक्त भएर अग्निदेव निरन्तर घृतपानको अभिलाषा गर्दछन्। देवताका आह्वानकर्ता, दानकर्ता, सबैका आश्रयस्वरूप अग्नि अरणि मन्थनबाट उत्पन्न हुनाले शक्तिका पुत्र हुन्। सर्वज्ञानसम्पन्न, शास्त्रज्ञ र ब्रह्मनिष्ठ ज्ञानीजस्ता अग्निदेवलाई हामी स्वीकार गर्दछौं।

यजिष्ठं त्वा यजमाना हुवेम ज्येष्ठमङ्गिरसां विप्र मन्मभिर्विप्रेभिः शुक्र मन्मभिः।
परिज्मानमिव द्यां होतारं चर्षणीनाम्। शोचिष्केशं वृषणं यमिमा विशः प्रावन्तु जूतये विशः ॥२॥

हे ज्ञानी र तेजस्वी अग्निदेव ! उत्तम विचारक यजमानहरूका लागि मनन गर्नयोग्य मन्त्रले यज्ञमा तिमीहरूलाई हामी आह्वान गर्दछौं। आफ्नो रक्षाका लागि श्रेष्ठतम, तेजस्वी, सूर्यजस्तै गतिमान, यज्ञनिर्वाहक एवं प्रदीप्त किरणयुक्त अग्निदेवलाई प्रजाहरू हुर्काउने बढाउने गर्दछन्।

स हि पुरू चिदोजसा विरुक्मता दीद्यानो भवति द्रुहन्तरः परशुर्न द्रुहन्तरः। वीळु चिद्यस्य समृतौ श्रुवद्वनेव यत्स्थिरम्। निष्षहमाणो यमते नायते धन्वासहा नायते ॥३॥

अग्निदेव तेजमयी सामर्थ्यले अत्यन्त दीप्तिमान, शत्रुमा त्रास उब्जाउने र द्रोहीलाई बन्चराले झैं छिनाउने गर्दछन्। अडिग धनुर्धारी योद्धाको जस्तै जसका प्रभावले बलवान् शत्रु पराजित हुन्छ र अनुशासन स्वीकार गर्दछ, तिनै अग्निदेवका संयोगले अत्यन्त कठोर पदार्थ पनि गलेर धुजा हुन्छ।

दृळ्हा चिदस्मा अनु दुर्यथा विदे तेजिष्ठाभिररणिभिर्दाष्ट्यवसेऽग्नये दाष्ट्यवसे। प्र यः पुरूणि गाहते तक्षद्वनेव शोचिषा। स्थिरा चिदन्ना निरिणात्योजसा नि स्थिराणि चिदोजसा ॥४॥

ज्ञानी पुरुषको धन दिने विधान भएझैं अति बलियो मानिस आफ्नो संरक्षणका निम्ति अग्निमा हविष्यान्न दिन्छ। अरणिमन्थनबाट प्रकट भएका अग्निदेव आफ्ना प्रचण्ड ज्वालामा प्रदीप्त हुन्छन् र

उसलाई ऐश्वर्यले परिपुष्ट पार्दछन्। अग्निदेव वनमा पसेपछि अन्न पकाएझैं आफ्ना तेजले अनेकौं बलिया शत्रुलाई डढाउँदै धराशायी गराउँछन्।

**तमस्य पृक्षमुपरासु धीमहि नक्तं यः सुदर्शतरो दिवातरादप्रायुषे दिवातरात्। आदस्यायुर्ग्रभणवद्वीळु शर्म न सूनवे। भक्तमभक्तमवो व्यन्तो अजरा अग्नयो व्यन्तो अजराः ॥५॥**

हामी अग्निदेवलाई यज्ञीय हविष्यान्न अर्पित गर्दछौं। त्यो काम दिनको तुलनामा राति ज्यादा रमणीय देखिन्छ। पिताले पुत्रका लागि सुखदायक निवास दिएझैं दिनको अपेक्षा रातका समयमा प्रखर तेजस्वी देखिने अग्निदेवका लागि हविष्य समर्पित गरौं। भक्त या अभक्तको भेद नगरी अग्निका ज्वालाले आहुति स्वीकार गर्दछन्। हविष्यान्न ग्रहण गर्ने अग्निदेव कहिल्यै वृद्ध हुँदैनन् र यजमानलाई पनि अजर बनाउँछन्।

**स हि शर्धो न मारुतं तुविष्वणिरप्नस्वतीषूर्वरास्विष्टनिरार्तनास्विष्टनिः। आदद्धव्यान्याददिर्यज्ञस्य केतुरर्हणा। अध स्मास्य हर्षतो हृषीवतो विश्वे जुषन्त पन्थां नरः शुभे न पन्थाम् ॥६॥**

पूजनीय अग्निदेव यज्ञस्थल, उब्जाउ क्षेत्र र रणक्षेत्रमा सबैतिर वेगवान् वायुझैं उच्च स्वरमा गर्जन गर्दछन्। यज्ञका ध्वजारूपी पूजनीय अग्निदेव हवि र हविष्यान्न स्वीकार गर्दछन्। आफ्नो खुसीयालीमा अरूलाई पनि खुसी गराउने अग्निदेवको मार्ग देवताले उसै प्रकार कल्याण प्राप्तिका लागि अनुसरण गर्दछन्, जसरी मानिसहरू कल्याणको इच्छाले सन्मार्गको अनुसरण गर्दछन्।

**द्विता यदीं कीस्तासो अभिद्यवो नमस्यन्त उपवोचन्त भृगवो मथ्नन्तो दाशा भृगवः। अग्निरीशे वसूनां शुचिर्यो धर्णिरेषाम्। प्रियाँ अपिधींर्वनिषीष्ट मेधिर आ वनिषीष्ट मेधिरः ॥७॥**

भृगु वंशमा उत्पन्न ऋषिहरूले मन्थन गरेर अग्निदेवलाई प्रकट गरे। स्तोत्रकर्ता, तेजवान् र विनयशील भृगुहरूले दुई रूपमा उनको प्रार्थना गरे। परम पवित्र, धारण गर्न योग्य, ज्ञानी अग्निदेवले प्रेमपूर्वक अर्पित गरिएको आहुति ग्रहण गरे। ज्ञानी अग्निदेवले धनमा प्रभुत्व स्थापित गर्दै हाम्रो प्रार्थना निश्चय स्वीकार गर्दछन्।

**विश्वासां त्वा विशां पतिं हवामहे सर्वासां समानं दम्पतिं भुजे सत्यगिर्वाहसं भुजे। अतिथिं मानुषाणां पितुर्न यस्यासया। अमी च विश्वे अमृतास आ वयो हव्या देवेष्वा वयः ॥८॥**

सम्पूर्ण प्रजाका रक्षक, समदर्शी, गृहपालक, सत्यवादी, अतिथिरूप अग्निदेवलाई सामग्री उपभोगका लागि हामी आह्वान गर्दछौं। हविष्यान्न पाउने आशामा सम्पूर्ण देवता पिताका नजिक पुत्र खाने वस्तु लिन गएझैं अग्निदेवका नजिक आउँछन्। यसै भावले मनुष्य पनि देवताका लागि आहुति प्रदान गर्दछन्।

**त्वमग्ने सहसा सहन्तमः शुष्मिन्तमो जायसे देवतातये रयिर्न देवतातये। शुष्मिन्तमो हि ते मदो द्युम्निन्तम उत क्रतुः। अध स्मा ते परि चरन्त्यजर श्रुष्टीवानो नाजर ॥९॥**

हे अग्निदेव ! तिमी आफ्ना बलबुताले शत्रु परास्त गरेर अति तेजस्वी रूपमा प्रकट भयौ। देवयज्ञका निम्ति धन प्रकट भएझैं यज्ञको संरक्षण गर्न अग्नि उत्पन्न भए। तिम्रो प्रसन्नता अति बलप्रद छ र कर्महरू ज्यादै प्रखर तेजस्वी छन्। हे अविनाशी अग्निदेव ! यिनै विशिष्ट गुणका कारण सबै मानिस दूतका रूपमा तिम्रो सेवा गर्दछन्।

**प्र वो महे सहसा सहस्वत उषर्बुधे पशुषे नाग्नये स्तोमो बभूत्वग्नये। प्रति यदीं हविष्मान्विश्वासु क्षासु जोगुवे। अग्रे रेभो न जरत ऋषूणां जूर्णिर्होत ऋषूणाम् ॥१०॥**

हे साधकहरू हो ! शत्रु पराजित गर्ने, प्रभात कालमा जाग्ने अग्निदेवको महिमाको स्तुति गाओ। त्यो स्तुति उदार मन भएका व्यक्तिले पशु आदि धन दान दिएपछि अरूले प्रशंसा गर्दै गाएको जस्तो खुसी लाग्ने होस्। यज्ञ सम्पन्न गर्नेहरू सबै ठाउँमा यस्तै विचार गर्दै प्रार्थना गर्दछन्। स्तुति गाउन कुशल होता देवताहरूमध्ये सर्वप्रथम अग्निदेवलाई नै प्रशंसित गर्दछन्। त्यो प्रशंसा चाटुकार चारणले धनी व्यक्तिको प्रशंसा गरेजस्तै हुन्छ।

**स नो नेदिष्ठं ददृशान आ भराग्ने देवेभिर्सचनाः सुचेतुना महो रायः सुचेतुना। महि शविष्ठ नस्कृधि सञ्चक्षे भुजे अस्यै। महि स्तोतृभ्यो मघवन्त्सुवीर्यं मथीरुग्रो न शवसा ॥११॥**

हे अग्निदेव ! नजिकैबाट दीप्तिमान् देखिने तिमी देवताहरूद्वारा पूजित छौ। कृपापूर्वक श्रेष्ठ धनले हामीलाई परिपूर्ण गर। हे शक्तिशाली अग्निदेव ! दीर्घायु गराउने उपभोग्य पदार्थ प्रदान गरेर हामीलाई यशस्वी बनाऊ। हे ऐश्वर्यप्रदाता अग्निदेव ! स्तोतालाई उचित शौर्यसम्पन्न र पराक्रमी बनाऊ र आफ्ना सामर्थ्य शक्तिले शत्रु संहार गर।

[सूक्त - १२८]

ऋषि - परुच्छेप दैवोदासि। देवता - अग्नि। छन्द - अत्यष्टि।

**अयं जायत मनुषो धरीमणि होता यजिष्ठ उशिजामनु व्रतमग्निर्स्वमनु व्रतम्। विश्वश्रुष्टिः सखीयते रयिरिव श्रवस्यते। अदब्धो होता नि षददिडस्पदे परिवीत इडस्पदे ॥१॥**

देवताको आह्वान गर्नका लागि गरिने यज्ञादि कर्म अग्निदेवबाट सम्पन्न हुन्छन्। यज्ञ कर्म र व्रतको नियम निर्वाह गर्नुपर्ने विचार गरेर मानिसहरूले अग्निमन्थन गरेर अग्निदेवलाई प्रकट गर्दछन्। मित्रताको भावना भएकालाई सर्वस्व र धनको खोजी गर्नेलाई धनका अथाह धनको भण्डार अग्निदेवले प्रदान गर्छन्। पीडाबाट मुक्ति पाएका, होताका रूपमा रहेका र ऋत्विक्हरूले घेरिएका अग्निदेव यज्ञवेदीमा स्थापित छन्। तिनी यज्ञस्थलमा निश्चित विधिले प्रतिष्ठित हुन्छन्।

**तं यज्ञसाधमपि वातयामस्यृतस्य पथा नमसा हविष्मता देवताता हविष्मता। स न ऊर्जामुपाभृत्यया कृपा न जूर्यति। यं मातरिश्वा मनवे परावतो देवं भाः परावतः ॥२॥**

सन्मार्गमा लागेका हामी अति विनम्रतापूर्वक, यज्ञीय कर्ममा घृत आदिले युक्त आहुति दिँदै अग्निदेवको अर्चना गर्दछौं। मनुका निमित्त मातरिश्वा वायुले सुदूर स्थानबाट ल्याएर अग्नि प्रदीप्त गराए। हामीले दिएको हविष्यान्न उनले ग्रहण गरे पनि ताप क्षमता कमी हुन दिँदैनन्।

**एवेन सद्यः पर्येति पार्थिवं मुहुर्गी रेतो वृषभः कनिक्रदद्धद्रेतः कनिक्रदत्। शतं चक्षाणो अक्षभिर्देवो वनेषु तुर्वणिः। सदो दधान उपरेषु सानुष्वग्निः परेषु सानुषु ॥३॥**

प्रशंसनीय सयौं आँखाले वनलाई प्रकाशमान गर्दै, नजिक वा टाढाका पर्वत शिखरमा आफ्नो स्थान बनाउँदै, शक्ति धारण गरेर शक्तिशाली बन्दै, गर्जनले शत्रुलाई विनाश गर्दै यी अग्निदेव सुगम मार्गबाट शीघ्रतापूर्वक पृथ्वीको परिक्रमा गर्दछन्।

**स सुक्रतुः पुरोहितो दमेदमेऽग्निर्यज्ञस्याध्वरस्य चेतति क्रत्वा यज्ञस्य चेतति। क्रत्वा वेधा इषूयते विश्वा जातानि पस्पशे। यतो घृतश्रीरतिथिरजायत वह्निर्वेधा अजायत ॥४॥**

सत्कर्ममा लागेका, अग्रगामी अग्निदेव प्रत्येक घरमा हिंसारहित यज्ञाग्निका रूपमा प्रज्वलित हुन्छन् र श्रेष्ठ कर्मद्वारा प्रदीप्त हुन्छन्। प्रखर कर्मद्वारा अन्न आदिको इच्छा गर्नेलाई ज्ञानी अग्निदेवले उपभोग्य पदार्थ प्रदान गर्दछन्। उनी घिउको आहुति ग्रहण गर्नका लागि पूजनीय अतिथिका रूपमा प्रकट भएका छन्। अग्निदेव हविवाहक हुन् र ज्ञानसम्पन्न छन्।

**क्रत्वा यदस्य तविषीषु पृञ्चतेऽग्नेरवेण मरुतां न भोज्येषिराय न भोज्येषिराय न भोज्या। स हि ष्मा दानमिन्वति वसूनां च मज्मना। स नस्त्रासते दुरितादभिह्रुतः शंसादघादभिह्रुतः ॥५॥**

जसरी मरुत्गण अग्निलाई भोजन गराउँछन् र जसरी भिक्षुकहरूलाई भोजन दिइन्छ उसै गरी याजकगण विचारपूर्वक आदरसहित अग्निका ज्वालामा आहुति चढाउँछन्। अग्निदेव आफ्नै सामर्थ्यले हविदातालाई धन दिएर पापकर्म र पराजयबाट रक्षा गर्छन्। उनैले दैवी अभिशाप र जीवन सङ्घर्षमा पराजयबाट जोगाउँछन्।

**विश्वो विहाया अरतिर्वसुर्दधे हस्ते दक्षिणे तरणिर्न शिश्रथच्छ्रवस्यया न शिश्रथत्। विश्वस्मा इदिषुध्यते देवत्रा हव्यमोहिषे। विश्वस्मा इत्सुकृते वारमृण्वत्यग्निर्द्वारा व्यृण्वति ॥६॥**

विश्वव्यापी, महान् एवं बलबर्गत भएका अग्निदेव सूर्यजस्तै छन्। उनी यजमानलाई दिनका लागि दाहिने हातमा धन लिइरहेका हुन्छन्। यशको कामना गर्दै सत्कर्ममा लाग्नेलाई तिनी मुठी खोलेर धन दिन्छन् तर दुष्ट र दुराचारीलाई होइन। हे दिव्यतायुक्त अग्निदेव ! तिमी हविष्यान्नका अभिलाषी सम्पूर्ण देवताहरूका लागि हवि वहन गर्दछौ र श्रेष्ठ कर्म गर्नेहरूका लागि धन प्रदान गर्दछौ। तिनीहरूका लागि धनको ढुकुटी पूरै खुला गरिदिन्छौ।

**स मानुषे वृजने शन्तमो हितोऽग्निर्यज्ञेषु जेन्यो न विश्पतिः प्रियो यज्ञेषु विश्पतिः। स हव्या मानुषाणामिळा कृतानि पत्यते। स नस्त्रासते वरुणस्य धूर्तेर्महो देवस्य धूर्तेः ॥७॥**

अग्निदेव मानिसको पाप निवारण गर्दछन्। उनी यज्ञीय कर्म गर्नेहरूका लागि अति सुखप्रद र हितकारी छन्। उनी विजेता राजाझैं सस्नेह प्रजापालक छन्। यजमानबाट दिइएको हविष्यान्न अग्निदेव ग्रहण गर्दछन्। यज्ञका विरोधी र धूर्तहरूबाट अग्निदेवले हामीलाई सुरक्षित गरुन्। महिमायुक्त देवताहरूका लागि रिस उठ्दो वज्रबाट उनले हामीलाई जोगाऊन्।

अग्निं होतारमीडते वसुधितिं प्रियं चेतिष्ठमरतिं न्येरिरे हव्यवाहं न्येरिरे। विश्वायु विश्ववेदसं होतारं यजतं कविम्। देवासो रण्वमवसे वसूयवो गीर्भी रण्वं वसूयवः ॥८॥

धन धारण गर्ने, अति चैतन्य, प्रेरणायुक्त, सर्वप्रिय, होतारूप अग्निदेवलाई सबै मानिस प्रार्थना गर्दछन् र उनीबाट प्रेरणा लिन्छन्। मानिसका प्रयासले नै हविवाहकका प्राणजस्ता, सर्वज्ञाता, देववाहक, पूजनीय र क्रान्तदर्शी अग्निदेव प्रज्वलित हुन्छन्। धनका रहर भएका हामी ऋत्विक्हरू आफ्नो संरक्षणका लागि उनै मन पर्ने अग्निका स्तोत्र गाउँदै अर्चना गर्दछौं।

## [सूक्त - १२९]

**ऋषि** - परुच्छेप दैवोदासि। **देवता** - इन्द्र इन्दु। **छन्द** - अत्यष्टि अतिशक्वरी अष्टि।

**यं त्वं रथमिन्द्र मेधसातयेऽपाका सन्तमिषिर प्रणयसि प्रानवद्य नयसि। सद्यश्चित्तमभिष्टये करो वशश्च वाजिनम्। सास्माकमनवद्य तूतुजान वेधसामिमां वाचं न वेधसाम् ॥१॥**

हे पापरहित तथा प्रेरक इन्द्रदेव ! तिमी यज्ञकार्यका लागि आफ्नो रथ अघि बढाउँछौ र अपरिपक्वलाई पनि चाँडै नै खोजेको पाउन सक्ने बनाइदिन्छौ। अन्नप्रति तिम्रो विशेष आकर्षण छ। शीघ्रतापूर्वक श्रेष्ठ कर्महरू सम्पन्न गर्ने पापमुक्त हे इन्द्रदेव ! वेदज्ञको स्तुति रूपी वाणी स्वीकार गरेझैं यो हवि तिमी स्वीकार गर।

**स श्रुधि यः स्मा पृतनासु कासु चिद्दक्षाय्य इन्द्र भरहूतये नृभिरसि प्रतूर्तये नृभिः। यः शूरैः स्व१ः सनिता यो विप्रैर्वाजं तरुता। तमीशानास इरधन्त वाजिनं पृक्षमत्यं न वाजिनम् ॥२॥**

हे इन्द्रदेव ! तिमी सङ्ग्राममा वीर पुरुषहरूसँग शत्रु नष्ट गर्न जान्दछौ। भरणपोषणका क्रममा जेजति स्वयं प्राप्त गर्ने र अन्न आदि वितरण गर्ने श्रेष्ठ पुरुषहरू छन्, उनलाई तिमी बलवर्गत दिन्छौ। हाम्रो प्रार्थना तिमी सुन। बलशाली मानिसले अश्वको सहारा लिएझैं समर्थ व्यक्तिले तेजस्वी इन्द्रदेवको आश्रय लिन्छन्।

**दस्मो हि ष्मा वृषणं पिन्वसि त्वचं कं चिद्यावीरररुं शूर मर्त्यं परिवृणक्षि मर्त्यम्। इन्द्रो तुभ्यं तद्दिवे तद्रुद्राय स्वयशसे। मित्राय वोचं वरुणाय सप्रथः सुमृडीकाय सप्रथः ॥३॥**

हे बलशाली इन्द्रदेव ! तिमी रमाइलोसित बादलभित्र पानी भराउँछौ। दुःख दिने असुरलाई पर लखेट्छौ र शत्रुलाई विनाश गर्दछौ। इन्द्रदेव शत्रुको विनाश गर्ने कारण हुन्। उनी रुद्रजस्तै भयङ्कर, मित्रजस्तै हितैषि, श्रेष्ठ सुखप्रद र सबैबाट वरणीय छन्।

**अस्माकं व इन्द्रमुश्मसीष्टये सखायं विश्वायुं प्रासहं युजं वाजेषु प्रासहं युजम्। अस्माकं ब्रह्मोतयेऽवा पृत्सुषु कासु चित्। नहि त्वा शत्रुः स्तरते स्तृणोषि यं विश्वं शत्रुं स्तृणोषि यम् ॥४॥**

हे मानिसहरू हो ! मित्रजस्तै हितैषि इन्द्रदेवलाई आयु बढाइमाग्न र शत्रु विनाश गर्नका लागि हामी यज्ञ सम्पादन गर्ने प्रार्थना गरौं। हे इन्द्रदेव ! तिमीले विनाश गर्न लागेका शत्रुहरू सङ्गठित भए पनि तिम्रा अगाडि अर्थहीन छन्। तिमी जुनसुकै सङ्ग्राममा हाम्रो ज्ञान र वर्गतलाई संरक्षित गरिदेऊ।

**नि षू नमातिमतिं कयस्य चित्तेजिष्ठाभिररणिभिर्नोतिभिरुग्राभिरुग्रोतिभिः। नेषि णो यथा पुरानेनाः शूर मन्यसे। विश्वानि पूरोरप पर्षि वह्निरासा वह्निर्नो अच्छ ॥५॥**

हे पराक्रमी इन्द्रदेव ! तिमी आफ्नो शक्तिशाली सामर्थ्य र संरक्षण साधनका तेजले शत्रुको अहङ्कार चुर गराइदेऊ। हे बलशाली इन्द्रदेव ! तिमी शत्रुनाशक भए पनि पापमुक्त छौ। उहिलेको जस्तै हामीलाई अगाडि लगाएर स्वयं नेता बन र मानिसको कालो कपट मेटाऊ। तिमी सधैं हाम्रा सम्मुखमा भइदेऊ।

**प्र तद्वोचेयं भव्यायेन्दवे हव्यो न य इषवान्मन्म रेजति रक्षोहा मन्म रेजति। स्वयं सो अस्मदा निदो वधैरजेत दुर्मतिम्। अव स्रवेदघशंसोऽवतरमव क्षुद्रमिव स्रवेत् ॥६॥**

आफ्ना पुरुषार्थले उन्नति खोज्ने मानिसहरू इन्द्रदेवजत्तिकै प्रशंसनीय र प्रार्थनायोग्य हुन्छन्। जसले दुष्टको नाश गर्छन् तिनीहरू स्तुत्य हुन्छन्। उत्तम सोमरसका लागि हामी स्तोत्र उच्चारण गरौं। उनी निन्दकलाई हामीदेखि टाढा राखून्। घातक अस्त्रले दुर्बुद्धिग्रस्त तथा कटु वाणी प्रयोग गर्नेहरूलाई नाश गरून्। सानो जलाशय सुकाएझैं शत्रुको जरै मासिदिऊन्।

वनेम तद्धोत्रया चितन्त्या वनेम रयिं रयिवः सुवीर्यं रण्वं सन्तं सुवीर्यम्। दुर्मन्मानं सुमन्तुभिरेमिषा पृचीमहि। आ सत्याभिरिन्द्रं द्युम्नहूतिभिर्यजत्रं द्युम्नहूतिभिः ॥७॥
हे वैभवशाली इन्द्रदेव ! हामी यजनीय वाणीले तिम्रो स्तुति गरौं र सुन्दर, शक्तिसम्पन्न सम्पदा लाभ गरौं। प्राप्त गर्न नसकिने भए पनि श्रेष्ठ, मननशील, सुविचार र सङ्कल्प शक्तिले इन्द्रदेवलाई हामी प्राप्त गरौं। यजन गर्न योग्य इन्द्रदेवका यशयुक्त सत्य स्वरूपलाई बयान गर्ने प्रार्थनाले प्रशंसित गरौं।

प्रप्रा वो अस्मे स्वयशोभिरूती परिवर्ग इन्द्रो दुर्मतीनां दरीमन्दुर्मतीनाम्। स्वयं सा रिषयध्यै या न उपेषे अत्रैः। हतेमसन्न वक्षति क्षिप्ता जूर्णिर्न वक्षति ॥८॥
आफ्ना संरक्षण सामर्थ्यले हामीलाई दुष्ट र दुर्बुद्धिग्रस्तहरूबाट यशस्वी इन्द्रदेवले जोगाऊन्। नजिक आएका भक्षक राक्षसले हाम्रो विनाश गर्ने हतारमा पठाएका सेना आपसी कलहमा अल्मलिएर विनाश होऊन्। उनीहरू हाम्रा नजिक आइनपुगून्।

त्वं न इन्द्र राया परीणसा याहि पथाँ अनेहसा पुरो याह्यरक्षसा। सचस्व नः पराक आ सचस्वास्तमीक आ। पाहि नो दूरादारादभिष्टिभिः सदा पाह्यभिष्टिभिः ॥९॥
हे इन्द्रदेव ! सबै किसिमका धन पापरहित मार्गबाट हामीलाई उपलब्ध गराऊ। धनका बलले कसैले हामीलाई नहेपोस्। तिमी हाम्रा टाढा वा नजिक जहाँ भए पनि हामीलाई संरक्षित गर। उपयोगी वस्तु दान गरेर हामीलाई सबै किसिमले सहायता गर।

त्वं न इन्द्र राया तरूषसोग्रं चित्त्वा महिमा सक्षदवसे महे मित्रं नावसे। ओजिष्ठ त्रातरविता रथं कं चिदमर्त्य। अन्यमस्मद्रिरिषेः कं चिदद्रिवो रिरिक्षन्तं चिदद्रिवः ॥१०॥
हे ओजस्वी, पालनकर्ता र अजम्मरी इन्द्रदेव ! तिमी सुखस्वरूप धनले हामीलाई दुःखकष्टबाट मुक्त गराऊ। तिमी सूर्यजस्तै तेजस्वी छौ। आफ्नो यशस्वी जीवन रक्षा गर्न हामी तिम्रै नजिकमा रहौं। हे वज्रधारी इन्द्रदेव ! तिमी आफ्ना विशेष रथले यहाँ आऊ। हामी भक्तहरूबाहेक अरूसित र हिंसक राक्षसप्रति क्रोधित होऊ।

पाहि न इन्द्र सुष्टुत स्रिधोऽवयाता सदमिद्दुर्मतीनां देवः सन्दुर्मतीनाम्। हन्ता पापस्य रक्षसस्त्राता विप्रस्य मावतः। अधा हि त्वा जनिता जीजनद्वसो रक्षोहणं त्वा जीजनद्वसो ॥११॥
हे श्रेष्ठ, स्तुतियोग्य इन्द्रदेव ! देवताका रूपमा रहेर तिमी पापकर्मबाट हामीलाई सधैं रक्षा गर। तिमी सधैं दुर्बुद्धिग्रस्तहरू र तिनका दुष्ट अभिलाषा नाश गर। विध्वंसक, पापी राक्षसहरूका घातक र विद्वान् पुरुषहरूका तिमी संरक्षक होऊ। हे आश्रयदाता ! यसै कारणले तिम्रो उत्पत्ति भएको हो।

[सूक्त - १३०]

ऋषि - परुच्छेप दैवोदासि। देवता - इन्द्र। छन्द - अत्यष्टि त्रिष्टुप्।

एन्द्र याह्युप नः परावतो नायमच्छा विदथानीव सत्पतिरस्तं राजेव सत्पतिः। हवामहे त्वा वयं प्रयस्वन्तः सुतेसचा। पुत्रासो न पितरं वाजसातये मंहिष्ठं वाजसातये ॥१॥
हे सज्जनका पालक इन्द्रदेव ! अग्निजस्तै टाढा भए पनि तिमी यज्ञमा पुग। राजाझैं यज्ञस्थलको सुरक्षा गर्न आऊ। पुत्रले पितालाई बोलाएझैं हामी हव्ययुक्त याजक अन्न प्राप्तिका लागि सोमयज्ञमा तिमीलाई आह्वान गर्दछौं।

पिबा सोममिन्द्र सुवानमद्रिभिः कोशेन सिक्तमवतं न वंसगस्तातृषाणो न वंसगः। मदाय हर्यताय ते तुविष्टमाय धायसे। आ त्वा यच्छन्तु हरितो न सूर्यमहा विश्वेव सूर्यम् ॥२॥
हे इन्द्रदेव ! जल मिसाउँदै सिलौटामा पिँधेर तयार गरेको सोमरस अत्यन्त तिर्खाएका गोरुले पोखरीमा पानी खाएझैं तिमी पान गर। खोजेको जस्तो आनन्द प्राप्तिका लागि तिम्रा अश्वले तिमीलाई यज्ञस्थलमा लिएर आऊन्। त्यति बेला तिमी किरणरूपी अश्वले सूर्यदेवलाई अभीष्ट दिशामा प्रेरित गरेझैं हुन्छौ।

अविन्ददिवो निहितं गुहा निधिं वेर्न गर्भं परिवीतमश्मन्यनन्ते अन्तरश्मनि। व्रजं वज्री गवामिव सिषासन्नङ्गिरस्तमः। अपावृणोदिष इन्द्रः परीवृता द्वार इषः परीवृताः ॥३॥
मांसभक्षी प्राणीले गाईको गोठ वा जङ्गलभित्र गुँडमा चराले लुकाएका बचेरा फेला पारेझैं अङ्गिराहरूमा उत्तम, तेजस्वी, वज्रधारी इन्द्रदेवले असीमित बादलमा लुकेको पानीको भण्डार

खोजेर निकाले। उनैले जलको वर्षा गराएर मानौँ मानिसहरूका लागि धन र खाद्यान्नरूपी वैभवको ढोका नै खोलिदिए।

**दादृहाणो वज्रमिन्द्रो गभस्त्योः क्षद्मेव तिग्ममसनाय सं श्यदहिहत्याय सं श्यत्। संविव्यान ओजसा शवोभिरिन्द्र मज्मना। तष्टेव वृक्षं वनिनो नि वृश्चसि परश्वेव नि वृश्चसि ॥४॥**

धारिलो वज्र शत्रुमाथि प्रहार गर्नको लागि इन्द्रदेवले हातमा बलियोसँग लिएका छन्। असुरता संहार गर्नका लागि पानीको तेज धाराजस्तै शस्त्रका धारमा साँध लगाउँछन्। हे इन्द्रदेव ! दाउरेले धारिलो बन्चराले जङ्गलका रुखहरू ढलेझैँ तिमी परशु नामका शस्त्रले शत्रुलाई संहार गर्दछौ।

**त्वं वृथा नद्य इन्द्र सर्तवेऽच्छा समुद्रमसृजो रथाँ इव वाजयतो रथाँ इव। इत ऊतीरयुञ्जत समानमर्थमक्षितम्। धेनूरिव मनवे विश्वदोहसो जनाय विश्वदोहसः ॥५॥**

हे इन्द्रदेव ! राजाले शक्ति र सामर्थ्य बढाउनका लागि रथसहितका सेना परिचालन गरेझैँ तिमीले नदीका पानीलाई सधैँभरि समुद्रतिर बग्नका लागि प्रेरित गऱ्यौ। रहर पूरा गरिदिने कामधेनु गाईझैँ नदीको प्रवाह बग्यो। त्यस प्रवाहले विचारशील मानिसलाई अविरल धनसम्पत्ति प्रदान गरिरहन्छ।

**इमां ते वाचं वसूयन्त आयवो रथं न धीरः स्वपा अतक्षिषुः सुम्नाय त्वामतक्षिषुः। शुम्भन्तो जेन्यं यथा वाजेषु विप्र वाजिनम्। अत्यमिव शवसे सातये धना विश्वा धनानि सातये ॥६॥**

हे इन्द्रदेव ! धन कमाउन सिपालु कारिगरले राम्रो रथ निर्माण गरेझैँ स्तोताहरूले तिम्रा लागि प्रशंसक स्तोत्र गाउने गर्दछन्। हे ज्ञानसम्पन्न इन्द्रदेव ! सारथीले विजयका लागि बलिया घोडालाई अरू बलियो बनाएझैँ स्तोताहरू पनि धन, बल र सुख पाउनका लागि स्तुतिबाट तिमीलाई झन् प्रोत्साहित गर्दछन्।

**भिनत्पुरो नवतिमिन्द्र पूरवे दिवोदासाय महि दाशुषे नृतो वज्रेण दाशुषे नृतो। अतिथिग्वाय शम्बरं गिरेरुग्रो अवाभरत्। महो धनानि दयमान ओजसा विश्वा धनान्योजसा ॥७॥**

हे आनन्ददाता इन्द्रदेव ! महान् दानदाता पुरु र दिवोदासका लागि तिमीले शत्रुका नब्बे सहर वज्रले विध्वंस पाऱ्यौ। हे पराक्रमी वीर इन्द्रदेव ! तिमीले आफ्नै बलबर्गतले अतिथिग्वलाई धेरै धनसम्पत्ति दियौ र शम्बरलाई पर्वतबाट मुन्ट्याएर मारिदियौ।

**इन्द्रः समत्सु यजमानमार्यं प्रावद्विश्वेषु शतमूतिराजिषु स्वर्मीढेष्वाजिषु। मनवे शासदव्रतान्त्वचं कृष्णामरन्धयत्। दक्षन्न विश्वं ततृषाणमोषति न्यर्शसानमोषति ॥८॥**

आपसमा सङ्गठित भएर गरिने युद्धमा सयौँ संरक्षण साधनले युक्त भएका इन्द्रदेवले असल मानिसको संरक्षण गर्दछन्। मननशील मानिसलाई दुःख दिने दुष्टलाई दण्ड दिएर नियन्त्रित गर्दै कलुषित कर्म गर्ने दुष्टको संहार गर्दछन्। आगोले पदार्थ डढाएझैँ इन्द्रदेव उपद्रवीलाई भस्म पारिदिन्छन्।

**सूरश्चक्रं प्र वृहज्जात ओजसा प्रपित्वे वाचमरुणो मुषायतीशान आ मुषायति। उशना यत्परावतोऽजगन्नूतये कवे। सुम्नानि विश्वा मनुषेव तुर्वणिरहा विश्वेव तुर्वणिः ॥९॥**

तेजस्वी र सबैका प्रेरक इन्द्रदेव आफ्नो बलबुतोरूपी चक्र लिएर शत्रुका अगाडि पुग्नासाथ मानौँ शत्रुको बोली नै बन्द भसकेका हो कि जस्तो लाग्छ। शत्रुहरू डरले शान्त हुन्छन्। हे क्रान्तदर्शी इन्द्रदेव ! तिमी उशना ऋषिको संरक्षणका लागि अति टाढादेखि उनका नजिक आएझैँ अन्य मानिसका लागि पनि सबै किसिमले सुख प्रदान गर। जसरी कुनै मानिस पूरा दिनभरि दान गरेर बिताउँछन्, हाम्रा निम्ति तिमी पनि उस्तै खालको दाता होऊ।

**स नो नव्येभिर्वृषकर्मन्नुक्थैः पुरां दर्तः पायुभिः पाहि शग्मैः।**
**दिवोदासेभिरिन्द्र स्तवानो वावृधीथा अहोभिरिव द्यौः ॥१०॥**

शत्रुका सहर ध्वस्त गर्न सक्ने हे इन्द्रदेव ! तिमी हालै रचिएका नयाँ स्तोत्रले सन्तुष्ट होऊ र हाम्रा सुखप्रद साधन तथा कर्मको संरक्षण गर। हे इन्द्रदेव दिउँसो सूर्यको तेज द्युलोकमा फिँजिएझैँ हाम्रा स्तोत्रले तिम्रो शक्ति बढोस्।

[सूक्त - १३१]

ऋषि - परुच्छेप दैवोदासि। देवता - इन्द्र। छन्द - अत्यष्टि।

**इन्द्राय हि द्यौरसुरो अनम्नतेन्द्राय मही पृथिवी वरीमभिर्द्युम्नसाता वरीमभिः। इन्द्रं विश्वे सजोषसो देवासो दधिरे पुरः। इन्द्राय विश्वा सवनानि मानुषा रातानि सन्तु मानुषा॥१॥**

विशाल पृथ्वी र तेजस्वी द्युलोकले आफ्नै साधनले इन्द्रदेवको सहयोग गरुन्। उत्साहित देवगणले सहमतिपूर्वक इन्द्रदेवलाई नेताका रूपमा स्थापित गरे। सबै देवताहरूले उनलाई आफ्नो नेता मानेर हविको भाग अर्पित गर्दछन्। मनुष्यले दिएको सोमसहितको आहुति इन्द्रदेवलाई समर्पित होस्।

**विश्वेषु हि त्वा सवनेषु तुञ्जते समानमेकं वृषमण्यवः पृथक् स्वः सनिष्यवः पृथक्। तं त्वा नावं न पर्षणिं शूषस्य धुरि धीमहि। इन्द्रं न यज्ञैश्चितयन्त आयवः स्तोमेभिरिन्द्रमायवः॥२॥**

हे इन्द्रदेव! सबै सोमयज्ञमा विभिन्न उद्देश्य भएका याजकहरू तिमीलाई हविष्यान्न प्रदान गर्दछन्। स्वर्गको प्राप्ति गर्न इच्छा भएकाहरू अलग्गै रूपले आहुति दिन्छन्। मानिसलाई सागरबाट तार्ने नौकाजस्तै इन्द्रदेवलाई जागरुक गराएर सेनाका अघिल्ला पङ्क्तिमा स्थापित गराइएको छ। हामी स्तुति गर्नेहरू स्तोत्रद्वारा तिम्रो ध्यान गर्दछौँ।

**वि त्वा ततस्रे मिथुना अवस्यवो व्रजस्य साता गव्यस्य निःसृजः सक्षन्त इन्द्र निःसृजः। यद्गव्यन्ता द्वा जना स्व१र्यन्ता समूहसि। आविष्करिक्रद्वृषणं सचाभुवं वज्रमिन्द्र सचाभुवम्॥३॥**

हे इन्द्रदेव! गृहस्थका पतिपत्नी नै संरक्षणसहित स्वर्ग एवं गाई प्राप्तिको इच्छा लिएर तिम्रा अगाडि उपस्थित हुन्छन्। यस्तो हुँदा हे इन्द्रदेव! गाईको बथान पाउनका लागि गरिएका सङ्ग्राममा तिम्रै नेतृत्वमा तिमीबाटै प्रेरित हुन पाउने आशामा यजमान यजमानले गर्दछन्। त्यसैले उनीहरू तिम्रा लागि यज्ञ सम्पादन गर्दछन्। तिमीले आफैँसित भएको वज्र निकाल्दछौ।

**विदुष्टे अस्य वीर्यस्य पूरवः पुरो यदिन्द्र शारदीरवातिरः सासहानो अवातिरः। शासस्तमिन्द्र मर्त्यमयज्युं शवसस्पते। महीममुष्णाः पृथिवीमिमा अपो मन्दसान इमा अपः॥४॥**

हे इन्द्रदेव! तिमीले शत्रुका सामर्थ्य लत्याइसकेपछि उसका शरदकालीन आवासीय नगर व्यवस्था विध्वंस गर्‍यौ। त्यस बेला प्रजाहरूमा तिम्रा पराक्रम शक्ति विख्यात भयो। हे शक्तिका प्रतिनिधि इन्द्रदेव! तिमीले मानिसको कल्याणका लागि यज्ञ विध्वंसक राक्षसहरूलाई दण्ड दिएर पृथ्वी एवं जलबाट उनीहरूको प्रभुत्व समाप्त गर्‍यौ।

**आदित्ते अस्य वीर्यस्य चर्किरन्मदेषु वृषन्नुशिजो यदाविथ सखीयतो यदाविथ। चकर्थ कारमेभ्यः पृतनासु प्रवन्तवे। ते अन्यामन्यां नद्यं सनिष्णत श्रवस्यन्तः सनिष्णत॥५॥**

हे शक्तिशाली इन्द्रदेव! तिमी हर्षित भएर आफ्ना यजमान र मित्रभाव राख्नेहरूको संरक्षण गर्‍यौ। उनीहरूले तिम्रा पराक्रमशक्तिको चारैतिर विस्तार गरे। तिमीले नै धन आदि वितरण गरेर सङ्ग्राममा वीरहरूलाई प्रोत्साहित गर्‍यौ। तिमीले एकअर्काका सहयोगले धन लाभ गराउँदै अन्न आदिको इच्छा गर्नेहरूलाई अन्न उपलब्ध गरायौ।

**उतो नो अस्या उषसो जुषेत ह्य१र्कस्य बोधि हविषो हवीमभिः स्वर्षाता हवीमभिः। यदिन्द्र हन्तवे मृधो वृषा वज्रिञ्चिकेतसि। आ मे अस्य वेधसो नवीयसो मन्म श्रुधि नवीयसः॥६॥**

हे इन्द्रदेव! प्रभातकालीन यज्ञ कर्मका समयमा हामीबाट उच्चरित स्तुतिमाथि ध्यान देऊ र आहुति ग्रहण गर। सुखी हुनका लागि स्तुतिको अभिप्राय बुझ। हे वज्रधारी इन्द्रदेव! जसरी तिमी शत्रुनाशक कार्यमा सचेत रहन्छौ उसै गम्भीरताले तिमी नयाँ रचिएका स्तोत्र र नयाँ ज्ञानी स्तोताका प्रार्थनामा ध्यान देऊ।

**त्वं तमिन्द्र वावृधानो अस्मयुरमित्रयन्तं तुविजात मर्त्यं वज्रेण शूर मर्त्यम्। जहि यो नो अघायति शृणुष्व सुश्रवस्तमः। रिष्टं न यामन्नप भूतु दुर्मतिर्विश्वाप भूतु दुर्मतिः॥७॥**

हे अति विख्यात, वीर इन्द्रदेव! हाम्रो संरक्षणका लागि हामीलाई दुःख दिने दुष्टलाई वज्र नामका हतियारले तिमी मारिदेऊ। हे इन्द्रदेव तिमी हाम्रा निवेदनमा ध्यान देऊ। दुर्बुद्धिहरूलाई संसारबाट नाश गर।

[सूक्त - १३२]

ऋषि - परुच्छेप दैवोदासि। देवता - इन्द्र पर्वत। छन्द - अत्यष्टि।

त्वया वयं मघवन्पूर्व्ये धन इन्द्रत्वोताः सासह्याम पृतन्यतो वनुयाम वनुष्यतः। नेदिष्ठे अस्मिन्नहन्यधि वोचा नु सुन्वते। अस्मिन्यज्ञे वि चयेमा भरे कृतं वाजयन्तो भरे कृतम् ॥१॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! तिम्रा संरक्षणमा रहेर युद्ध गर्दा हामी पहिलो पटक नै आक्रमण गर्न आउने शत्रुमाथि विजय पाऔँ। तिमी हिंसक वृत्ति भएका दुष्टहरूको संहार गर। निकट भविष्यमा साधकलाई तिमी प्रेरित गर। उत्तम कर्मका लागि सङ्घर्ष गर्ने हामी याजकहरू यस यज्ञमा तिमीलाई वरण गर्दछौँ। हामी शक्तिसम्पन्न बनेर युद्धको नेतृत्व गर्न कुशल र योग्य बनौँ।

स्वर्जेषे भर आप्रस्य वक्मन्युषर्बुधः स्वस्मिन्नञ्जसि क्राणस्य स्वस्मिन्नञ्जसि। अहन्निन्द्रो यथा विदे शीर्ष्णाशीर्ष्णोपवाच्यः। अस्मत्रा ते सध्र्यक् सन्तु रातयो भद्रा भद्रस्य रातयः ॥२॥

सुख खोज्न गरिने सङ्घर्ष, असल मानिसको उच्च लक्ष्य, बिहान सत्कर्म निर्वाह गर्न उठ्नेहरूका नित्यकर्ममा बाधा पार्ने शत्रु भनेका अल्छयाइँ, लोस्याइँ आदि हुन्। ती शत्रुलाई इन्द्रदेवले ज्ञानको तिखो धारले समाप्त गरे। यसबाट मानिसका बीचमा इन्द्रदेव प्रशंसनीय भए। हे इन्द्रदेव ! तिम्रो सम्पूर्ण ऐश्वर्य हामीलाई प्राप्त होस्। तिमीजस्ता मङ्गलकारीका सबै सहयोगहरू हामीलाई मङ्गलमय होऊन्।

तत्तु प्रयः प्रत्नथा ते शुशुक्वनं यस्मिन्यज्ञे वारमकृण्वत क्षयमृतस्य वारसि क्षयम्। वि तद्वोचेरध द्वितान्तः पश्यन्ति रश्मिभिः। स घा विदे अन्विन्द्रो गवेषणो बन्धुक्षिद्भ्यो गवेषणः ॥३॥

हे इन्द्रदेव तिमीले यज्ञमा आफ्ना लागि प्रतिष्ठित स्थान बनाएका छौ। तो यज्ञमा तिमीलाई तेजस्वी अन्न उपलब्ध होस्। सत्यको महिमायुक्त उच्च स्थानमा पुग्न चाहनेलाई तिमी सत्यको मार्ग देखाऊ। सूर्यरश्मिबाट सबै मानिसहरू दुवै लोकका बीचमा रहेका मेघका रूपमा तिम्रो दर्शन गर्दछन्। तिमी नै सत्य धामका ज्ञाता पनि हौ र यजमानका लागि गाई प्रदान गर्ने पनि हौ भन्ने सुनिन्छ।

नू इत्था ते पूर्वथा च प्रवाच्यं यदङ्गिरोभ्योऽवृणोरप व्रजमिन्द्र शिक्षन्नप व्रजम्। ऐभ्यः समान्या दिशास्मभ्यं जेषि योत्सि च। सुन्वद्भ्यो रन्धया कं चिदव्रतं हृणायन्तं चिदव्रतम् ॥४॥

हे इन्द्रदेव ! उहिलेको जस्तै तिम्रा पराक्रमको शक्ति प्रशंसनीय छ। तिमीले गाईको बथान जितेर अङ्गिरालाई दिँदै लैजाने बाटो देखाए जसरी नै हाम्रा लागि पनि ऐश्वर्य जितेर प्रदान गर। तिम्रो विरोध गर्ने, क्रोधी र पापीलाई यज्ञ आदि असल काम गर्नेहरूका हितका लागि नष्ट गराऊ।

सं यज्जनान् क्रतुभिः शूर ईक्षयद्धने हिते तरुषन्त श्रवस्यवः प्र यक्षन्त श्रवस्यवः। तस्मा आयुः प्रजावदिद्बाधे अर्चन्त्योजसा। इन्द्र ओक्यं दिधिषन्त धीतयो देवाँ अच्छा न धीतयः ॥५॥

बलशाली इन्द्रदेवले पराक्रमयुक्त कर्मले मानिसतिर हेरे। अन्नको खोजी गर्ने मानिसले युद्धको थालनी हुँदा शत्रुलाई विनाश गराए। यशको आशा भएकाहरूले इन्द्रदेवलाई विशेष अर्चना गरे। उनी आफ्ना बलबुताले शत्रु सखाप पारेर असल सन्तान र दीर्घायु प्रदान गर्दछन्। असल कर्म गर्ने मानिस इन्द्रदेवलाई एकमात्र आश्रयदाता मान्दछन्।

युवं तमिन्द्रापर्वता पुरोयुधा यो नः पृतन्यादप तन्तमिद्धतं वज्रेण तन्तमिद्धतम्। दूरे चत्ताय च्छन्त्सद्गहनं यदिनक्षत्। अस्माकं शत्रून्परि शूर विश्वतो दर्मा दर्षीष्ट विश्वतः ॥६॥

युद्धक्षेत्रमा अघि सरेर पराक्रम देखाउने इन्द्रदेव र पर्वत ! तिमीहरू दुई युद्ध गर्ने प्रत्येक शत्रुलाई आफ्ना तिखा वज्रका प्रहारले यमलोक पुऱ्याओ। हे वीरहरू हो ! शत्रुबाट चारैतिर घेरिएँ भने हामीलाई तिनीहरूबाट मुक्त गराओ। पृथ्वी, अन्तरिक्ष र स्वर्ग यी तीनै लोकमा व्याप्त हे देवताहरू हो ! तिमीहरूका अनुग्रहले हामी सबै याजकहरू श्रेष्ठ वीर पराक्रमी सन्तानले युक्त भएर अपार धनवैभवबाट लाभान्वित होऔँ।

[सूक्त - १३३]

ऋषि - परुच्छेप दैवोदासि। देवता - इन्द्र। छन्द - त्रिष्टुप् गायत्री धृति अत्यष्टि।

उभे पुनामि रोदसी ऋतेन द्रुहो दहामि सं महीरनिन्द्राः।
अभिव्लग्य यत्र हता अमित्रा वैलस्थानं परि तृळ्हा अशेरन् ॥१॥

जुन इन्द्रदेवले यज्ञका शक्तिले दुवै लोकलाई पवित्र गराउँछन्, हामी तिनै इन्द्रदेवका विरोधी र अति

भयङ्कर द्रोहीहरूलाई डढाउँछौं। जहाँ ठूलो सङ्ख्यामा शत्रु मारिन्छन्, त्यहाँ लासहरूले युद्धभूमि चिहानजस्तै लाग्दछ।

**अभिव्लग्या चिदद्रिवः शीर्षा यातुमतीनाम्।**
**छिन्धि वटूरिणा पदा महावटूरिणा पदा ॥२॥**

हे वज्रधारी इन्द्रदेव ! तिमी हिंस्रक पशुका अत्यन्त नजिक जाऊ र आफ्ना विशाल सैन्य शक्तिले तिनलाई गोडाले मिचिदेऊ।

**अवासां मघवञ्जहि शर्धो यातुमतीनाम्।**
**वैलस्थानके अर्मके महावैलस्थे अर्मके ॥३॥**

हे ऐश्वर्यशाली इन्द्रदेव ! तिमी मृत मानिसको घृणित स्थान र घृणित चिहानजस्ता यी हिंस्रक सैन्यशक्तिलाई आफ्ना बलबुताले नष्ट गराऊ।

**यासां तिस्रः पञ्चाशतोऽभिव्लङ्गैरपावपः।**
**तत्सु ते मनायति तकत्सु ते मनायति ॥४॥**

हे इन्द्रदेव ! पचासका तीन गुना शत्रु चारै तिरबाट छेकेर नष्ट गराउने तिम्रो पराक्रमी युद्धका चालसहितका कार्यको अरूले खास महत्त्व नदेखे पनि प्रशंसनीय छ।

**पिशङ्गभृष्टिमम्भृणं पिशाचिमिन्द्र सं मृण। सर्वं रक्षो नि बर्हय ॥५॥**

हे इन्द्रदेव ! तिमी रिसले भुङ्ग्रो भएका शस्त्रधारी र विशालकाय पिशाचहरूलाई नष्ट गर। तिमी सबै राक्षसी शक्तिलाई नाश गर।

**अवर्मह इन्द्र दादृहि श्रुधी नः शुशोच हि द्यौः क्षा न भीषाँ अद्रिवो घृणान्न भीषाँ अद्रिवः। शुष्मिन्तमो हि शुष्मिभिर्वधैरुग्रेभिरीयसे। अपूरुषघ्नो अप्रतीत शूर सत्वभिस्त्रिसप्तैः शूर सत्वभिः ॥६॥**

हे वज्रधारी इन्द्रदेव ! हाम्रो निवेदनमा तिमी भयङ्कर राक्षसहरूको सामर्थ्य क्षीण गराएर उनीहरूलाई संहार गर। पृथ्वीमा भएको अत्याचारबाट दिव्यलोक पनि शोकाकुल छ। हे वज्रधारी इन्द्रदेव ! अग्निले भस्म भएझैं तिम्रा भयले शत्रु दुःखी छन्। बलशाली सेनालाई बलियो शस्त्रबलले सुसज्जित गरेर तिमी शत्रुदलका नजिक जान्छौ। हे अग्रगामी वीर ! तिमी आफ्ना शूरवीरलाई सुरक्षित गर्नका लागि तत्पर रहन्छौ। हे शूरवीर इन्द्रदेव ! तिमी एक्काईस सेनाहरूका साथ अर्थात् विशाल सैन्यशक्तिका साथ युद्धमा जान्छौ।

**वनोति हि सुन्वन्क्षयं परीणसः सुन्वानो हि ष्मा यजत्यव द्विषो देवानामव द्विषः। सुन्वान इत्सिषासति सहस्रा वाज्यवृतः। सुन्वानायेन्द्रो ददात्याभुवं रयिं ददात्याभुवम् ॥७॥**

सबैतिर बिगबिगी मच्चाएका दुष्ट र देवताका विरोधीहरूलाई सोमरस पेलेर तयार गर्ने यजमानहरूले लखेट्छन्। स्वतन्त्र रहेका इन्द्रदेवले यजमानलाई हजारौं किसिमको धन प्रदान गर्दछन्। उनीहरू तिनलाई वैभव प्रदान गर्दछन्।

[सूक्त - १३४]

**ऋषि – परुच्छेप दैवोदासि। देवता – वायु। छन्द – अत्यष्टि अष्टि।**

**आ त्वा जुवो रारहाणा अभि प्रयो वायो वहन्त्विह पूर्वपीतये सोमस्य पूर्व-पीतये। ऊर्ध्वा ते अनु सूनृता मनस्तिष्ठतु जानती। नियुत्वता रथेना याहि दावने वायो मखस्य दावने ॥१॥**

हे वायुदेव हो ! तिमीहरूलाई छिटो कुद्ने घोडाले उहिलेको जस्तै हविष्यान्नका लागि यस सोमयागमा पुऱ्याऊन्। हे वायुदेव हो ! हाम्रा प्रार्थनाले अभिव्यक्त प्रिय वाणी तिमीहरूका गुणसित परिचित छन्। ती तिमीहरूका अनुरूप नै होऊन्। तिमीहरू आफ्ना रथबाट आहुति ग्रहण गर्नका लागि यस यज्ञमा आओ।

**मन्दन्तु त्वा मन्दिनो वायविन्दवोऽस्मत्क्राणासः सुकृता अभिद्यवो गोभिः क्राणा अभिद्यवः। यद्ध क्राणा इरध्यै दक्षं सचन्त ऊतयः। सध्रीचीना नियुतो दावने धिय उप ब्रुवत ईं धियः ॥२॥**

हे वायुदेव हो ! तिमीहरू हामीबाट राम्रोसित तयार गरिएको, उत्साहवर्धक, तेजयुक्त र गाईको दुध मिसाइएको सोमरस आनन्दपूर्वक पान गर। पुरुषार्थी मानिस संरक्षणका विचारले शक्ति सञ्चय गर्ने प्रयास गर्दछन्। सबै विवेकशील मानिस सामुहिक प्रयासले सङ्गठित भएर विवेकसम्मत दानका लागि तिमीहरूको प्रार्थना गर्दछन्।

**वायुर्युङ्क्ते रोहिता वायुररुणा वायू रथे अजिरा धुरि वोढवे वहिष्ठा धुरि वोढवे। प्र बोधया पुरन्धिं जार आ ससतीमिव। प्र चक्षय रोदसी वासयोषसः श्रवसे वासयोषसः ॥३॥**

वायुदेव यात्रा गर्ने विचारले भारी बोकन सक्ने रातो र अरुण रङ्गका दुई बलिष्ठ अश्व आपना रथका धुरामा जोत्दछन्। हे वायुदेव ! प्रेमी पुरुषले सुतेकी आइमाईलाई जगाएझैं तिमी मानिसलाई जगाऊ। द्युलोक र पृथिवीलाई निश्चित रूपले प्रकाशित गर र ऐश्वर्यका लागि उषादेवीलाई आलोकित तुल्याऊ।

**तुभ्यमुषासः शुचयः परावति भद्रा वस्त्रा तन्वते दंसु रश्मिषु चित्रा नव्येषु रश्मिषु। तुभ्यं धेनुः सबर्दुघा विश्वा वसूनि दोहते। अजनयो मरुतो वक्षणाभ्यो दिव आ वक्षणाभ्यः ॥४॥**

हे वायुदेव ! तिमीहरूका लागि टाढा रहेका पवित्र उषाले नयाँ, हेरिरहूँजस्ता रश्मिले अद्भुत कल्याणकारी वस्त्र बुन्दछिन्। अमृतरूपी दुध दिने गाईहरू तिम्रा लागि सम्पूर्ण धन प्रदान गर्दछन्। यिनै अजन्मा हावाबाट नदीको जल आकाशमाथि जान्छ। त्यसपछि बर्सिएर नदीमै फेरि आउँछ। त्यसैले पानी बर्साउने मूल कारण वायुदेव नै हुन्।

**तुभ्यं शुक्रासः शुचयस्तुरण्यवो मदेषूग्रा इषणन्त भुर्वण्यपामिषन्त भुर्वणि। त्वां त्सारी दसमानो भगमीट्टे तक्ववीये। त्वं विश्वस्माद्भुवनात्पासि धर्मणा–सुर्यात्पासि धर्मणा ॥५॥**

हे वायुदेव ! उज्ज्वल, पवित्र, गतिशील, तीक्ष्ण सोमरसले ऐश्वर्यप्रद यज्ञका अवसरमा तिम्रै सहयोगको इच्छा गर्दछ। जलको स्थापना गर्न र अर्को ठाउँमा सार्न तिम्रै विशेष सहयोग चाहिन्छ। हे वायुदेव ! निर्बल मानिस आपद् निवारण गर्नका लागि तिमीसितै प्रार्थना गर्दछ। किनभने तिमी नै निरन्तर प्राणवायुका सञ्चारले सम्पूर्ण संसारलाई आसुरी शक्तिबाट संरक्षण प्रदान गर्दछौ।

**त्वं नो वायवेषामपूर्व्यः सोमानां प्रथमः पीतिमर्हसि सुतानां पीतिमर्हसि। उतो विहुत्मतीनां विशां ववर्जुषीणाम्। विश्वा इत्ते धेनवो दुह्र आशिरं घृतं दुह्रत आशिरम् ॥६॥**

हे अति श्रेष्ठ वायुदेव ! हामीबाट तयार पारिएको सोमरस सर्वप्रथम पान गर्नका लागि तिमी उपयुक्त छौ। सम्पूर्ण गाईले तिम्रै लागि दुध र घिउ दिएझैं तिमी पनि प्राणवायु प्रदान गर। निष्पाप यज्ञ गर्ने मानिसले दिएको हवि तिमी ग्रहण गर।

## [सूक्त – १३५]

**ऋषि** – परुच्छेप दैवोदासि। **देवता** – वायु इन्द्रवायु। **छन्द** – अत्यष्टि अष्टि।

**स्तीर्णं बर्हिरुप नो याहि वीतये सहस्रेण नियुता नियुत्वते शतिनीभिर्नियुत्वते। तुभ्यं हि पूर्वपीतये देवाय येमिरे। प्र ते सुतासो मधुमन्तो अस्थिरन्मदाय क्रत्वे अस्थिरन् ॥१॥**

हे वायुदेव ! तिम्रा लागि नै हामीले कुशको आसन बिछाएका छौं। तिमी सहस्र अश्वले युक्त रथबाट हविष्यान्न ग्रहण गर्नका लागि यहाँ आऊ। शक्तिरूपी सयौं अश्वहरूले युक्त वायुदेवका लागि ऋत्विक्हरूले सोमरस तयार गरेका छन्। पेलेर तयार पारिएको मिठो सोमरस यज्ञमा तिम्रो आनन्दका लागि प्रस्तुत छ।

**तुभ्यायं सोमः परिपूतो अद्रिभिः स्पार्हा वसानः परि कोशमर्षति शुक्रा वसानो अर्षति। तवायं भाग आयुषु सोमो देवेषु हूयते। वह वायो नियुतो याह्यस्मयुर्जुषाणो याह्यस्मयुः ॥२॥**

हे वायुदेव ! ढुङ्गामा कुटेर प्रशोधन गरिएको र मन पर्दो तेज भएको सोमरस कलसमा राखिएको छ। तिमी शुद्ध एवं कान्तिमान् सोमको भाग सबैभन्दा पहिले लिन्छौ। मानिसले सबैभन्दा पहिले देवताको रूपमा तिमीलाई आह्वान गर्दछन्। हे वायुदेव ! तिमी स्वयं नै अश्व धपाएर हामीकहाँ आउने मन गर।

**आ नो नियुद्भिः शतिनीभिरध्वरं सहस्रिणीभिरुप याहि वीतये वायो हव्यानि वीतये। तवायं भाग ऋत्वियः सरश्मिः सूर्ये सचा। अध्वर्युभिर्भरमाणा अयंसत वायो शुक्रा अयंसत ॥३॥**

हे वायुदेव ! तिमी हाम्रा यज्ञमा सयौं वा हजारौं अश्वसहित सोमरस पान गर्न आऊ। तिम्रा लागि ऋतुअनुसारको सोमरस तयार गरिएको छ। सूर्यका रश्मिका सम्पर्कले गर्दा सोमरसले सूर्यदेवको जस्तो तेज धारण गरेको छ। हे वायुदेव ! ऋत्विक्हरूबाट यो सोमरस तिम्रो शक्ति बढाउनका लागि कलस भरेर राखिएको छ।

आ वां रथो नियुत्वान्वक्षदवसेऽभि प्रयांसि सुधितानि वीतये वायो हव्यानि वीतये। पिबतं मध्वो अन्धसः पूर्वपेयं हि वां हितम्। वायवा चन्द्रेण राधसा गतमिन्द्रश्च राधसा गतम् ॥४॥
हे वायुदेव ! तिमी र इन्द्रदेव दुवै घोडाले तानिएका रथबाट राम्रोसित तयार पारिएको सोमरसरूपी हविष्यान्न ग्रहण गर्न र हाम्रो संरक्षणका लागि यहाँ आओ। यहाँ आएर हामीबाट तयार गरिएको सोमरस पान गर। हे वायुदेव ! इन्द्रदेवका साथ तिमी आनन्दप्रद ऐश्वर्य हामीलाई प्रदान गर।

आ वां धियो ववृत्युरध्वराँ उपेममिन्दुं मर्मृजन्त वाजिनमाशुमत्यं न वाजिनम्। तेषां पिबतमस्मयू आ नो गन्तमिहोत्या। इन्द्रवायू सुतानामद्रिभिर्युवं मदाय वाजदा युवम् ॥५॥
हे इन्द्रदेव र वायुदेव हो ! तिमीहरू दुवैको बुद्धि सधैं यज्ञीय कर्मसित रहोस्। गतिशील घोडालाई सइसले सफा गरेझैं बलवर्धक सोमरस तिमीहरूका लागि हामी तयार गर्छौं। हे इन्द्रदेव र वायुदेव ! तिमीहरू दुवै संरक्षण साधनसहित यहाँ आएर सोमरस पान गर। ढुङ्गामा कुटेर निचोरिएको बल बढाउने सोमरस पिएर दुवै आनन्द मनाओ।

इमे वां सोमा अप्स्वा सुता इहाध्वर्युभिर्भरमाणा अयंसत वायो शुक्रा अयंसत। एते वामभ्यसृक्षत तिरः पवित्रमाशवः युवायवोऽति रोमाण्यव्यया सोमासो अत्यव्यया ॥६॥
ऋत्विक्हरूले पेलेको सोमरस तिमीहरू दुवैलाई यज्ञमा उपलब्ध होस्। हे वायुदेव ! दीप्तिमान् र प्रवाहित हुने यो सोमरस तिम्रा लागि तेर्छो धाराबाट पात्रमा खन्याइन्छ। यसै किसिमले तिमीहरूलाई प्राप्त होस्। अखण्डित रोमतन्तुहरूले छानिएको सोमरस संरक्षक गुणले अति सम्पन्न भएको हुन्छ।

अति वायो ससतो याहि शश्वतो यत्र ग्रावा वदति तत्र गच्छतं गृहमिन्द्रश्च गच्छतम्। वि सूनृता ददृशे रीयते घृतमा पूर्णया नियुता याथो अध्वरमिन्द्रश्च याथो अध्वरम् ॥७॥
हे वायुदेव ! तिमी सुतिरहेका अल्छेलाई छोडेर अगाडि जान्छौ। ढुङ्गामा सोम कुटेको ध्वनि, वेदमन्त्रको ध्वनि र घिउको आहुतिले यज्ञ सम्पन्न सधैं जहाँ हुन्छ उसै ठाउँमा जान्छौ। इन्द्रदेव र तिमी दुवै प्राणशक्ति प्रदान गर्नका लागि बलशाली घोडामा यज्ञस्थलमा पुग।

अत्राह तद्वहेथे मध्व आहुतिं यमश्वत्थमुपतिष्ठन्त जायवोऽस्मे ते सन्तु जायवः। साकं गावः सुवते पच्यते यवो न ते वाय उप दस्यन्ति धेनवो नाप दस्यन्ति धेनवः ॥८॥
हे इन्द्र र वायुदेव ! पुरुषार्थीहरूले औषधीका रूपमा पर्वतमा फैला पारेका सोमरसले नै तिमीहरू दुईलाई यहाँ लिएर आओस्। यो सोमरूपी औषधी प्राप्त गर्न पुरुषार्थीहरू सफल होऊन्। तिमीहरूका लागि गाईले अमृतरूपी दुध दिन्छन् र जौ आदि अन्न पनि तिमीहरूले सोमरसमा हाल्नका लागि पकाइने गर्दछ। हे वायुदेव ! तिम्रा लागि दुधालु गाई कहिल्यै कम नहोऊन्, कसैले गाई नखोसोस्।

इमे ये ते सु वायो बाह्वोजसोऽन्तर्नदी ते पतयन्त्युक्षणो महिव्राधन्त उक्षणः। धन्वञ्चिद्ये अनाशवो जीराश्चिदगिरौकसः। सूर्यस्येव रश्मयो दुर्नियन्तवो हस्तयोर्दुर्नियन्तवः ॥९॥
हे श्रेष्ठ वायुदेव ! तिम्रा बलशाली तन्नेरी घोडाले तिमीलाई द्युलोक र पृथ्वीका मध्य भागमा सजिलैसित लिएर जान्छ। यो मरुस्थलमा पनि उति नै तेज गतिमा कुद्छ। अति वेगशाली अश्वको वर्णन वाणीले गर्नु असम्भव छ। जसरी सूर्यका किरणलाई कसैले नियन्त्रित गर्न सक्दैन, उसै गरी वायुका गतिलाई हातले रोक्नु पनि सर्वथा असम्भव छ।

[सूक्त - १३६]

ऋषि - परुच्छेप दैवोदासि। देवता - मित्रावरुण लिङ्गोक्त। छन्द - अत्यष्टि त्रिष्टुप्।

प्र सु ज्येष्ठं निचिराभ्यां बृहन्नमो हव्यं मतिं भरता मृळयद्भ्यां स्वादिष्ठं मृळयद्भ्याम्। ता सम्राजा घृतासुती यज्ञेयज्ञ उपस्तुता। अथैनोः क्षत्रं न कुतश्चनाधृषे देवत्वं नू चिदाधृषे ॥१॥
हे मनुष्य हो ! मित्र र वरुणदेव अति तेजस्वी, घिउको आहुति रोज्न गर्ने र प्रत्येक यज्ञमा प्रार्थना गर्न उपयुक्त छन्। हामी सबैले श्रद्धा र भक्तिसहित मित्र र वरुणदेवलाई प्रणाम गरौं र उत्तम बुद्धिले उनीहरूको प्रार्थना गरौं। यिनीहरूको रक्षा गर्ने बल र देवत्वलाई क्षीण गराउन कसैले सक्दैन।

अदर्शि गातुरुरवे वरीयसी पन्था ऋतस्य समयंस्त रश्मिभिश्चक्षुर्भगस्य रश्मिभिः। द्युक्षं मित्रस्य सादनमर्यम्णो वरुणस्य च। अथा दधाते बृहदुक्थ्यं वय उपस्तुत्यं बृहद्वयः ॥२॥
यज्ञका लागि फुर्तिलो उषादेवी प्रकाशित भएकी छिन्। रश्मिले सूर्यको मार्ग उज्यालो भयो। ऐश्वर्यशाली सूर्यदेवका रश्मिले आँखामा प्रकाशशक्ति आयो। मित्र, अर्यमा र वरुणदेवहरू तेजयुक्त भए, त्यसैले सम्पूर्ण देवताहरूका लागि आहुतिका रूपमा प्रशंसनीय हविष्यान्न अर्पित गरौं। उनीहरूले त्यो स्वीकार गर्दछन्।

ज्योतिष्मतीमदितिं धारयत्क्षितिं स्वर्वतीमा सचेते दिवेदिवे जागृवांसा दिवे-दिवे। ज्योतिष्मत्क्षत्रमाशाते आदित्या दानुनस्पती। मित्रस्तयोर्वरुणो यात-यज्जनोऽर्यमा यातयज्जनः ॥३॥
विशिष्ट धारण क्षमता भएकी पृथ्वी र दिव्य तेजयुक्त अदिति देवीका सेवामा मित्र र वरुणदेव नित्य जागा रहेर खटिन्छन्। धनका अधिपति आदित्यगणले नित्य तेजस्वी शक्ति प्राप्त गर्दछन्। मित्र, वरुण र अर्यमा यी तीन देवले मानिसलाई असल बाटामा अघि बढाउँछन्।

अयं मित्राय वरुणाय शन्तमः सोमो भूत्ववपानेष्वाभगो देवो देवेष्वाभगः। तं देवासो जुषेरत विश्वे अद्य सजोषसः। तथा राजाना करथो यदीमह ऋतावाना यदीमहे ॥४॥
पेय पदार्थमा सबैभन्दा गतिलो सोम देवताहरूमा महावैभवसम्पन्न मित्र र वरुण दुवैलाई आनन्दप्रद होस्। सामञ्जस्ययुक्त सद्विचार र सद्भावनाका प्रेरक सम्पूर्ण देवसमूहले सोमरस सेवन गरुन्। हे तेजसम्पन्न मित्र र वरुणदेव ! तिमीहरू असल कर्मका प्रेरक हौ। हाम्रो अभीष्ट कामना निश्चय पूर्ण गर।

यो मित्राय वरुणायाविधज्जनोऽनर्वाणं तं परि पातो अंहसो दाश्वांसं मर्तमंहसः। तमर्यमाभि रक्षत्यृजूयन्तमनु व्रतम्। उक्थैर्य एनोः परिभूषति व्रतं स्तोमैराभूषति व्रतम् ॥५॥
विद्वेषको भावनाविहीन भएर जसले मित्र र वरुणप्रति सेवाभाव राख्छन्, आफ्ना प्रशंसनीय कर्मले दुवैलाई सुशोभित गर्दछन्, जसले वाणीबाट उनका कर्मको महत्त्व बढाउँछन्, तिनीहरूलाई नै मित्र र वरुणदेव दुष्कर्मरूपी पापबाट सुरक्षित गर्दछन्। जो दानशील, सरल र सत्यको बाटो अँगाल्दछन् र असल व्रतप्रति अनुशासित छन्, त्यस्ता सबै मानिसलाई अर्यमादेव दुःखदायी पापकर्मबाट जोगाउँछन्।

नमो दिवे बृहते रोदसीभ्यां मित्राय वोचं वरुणाय मीढुषे सुमृडीकाय मीढुषे। इन्द्रमग्निमुप स्तुहि द्युक्षमर्यमणं भगम्। ज्योग्जीवन्तः प्रजया सचेमहि सोमस्योती सचेमहि ॥६॥
द्यावापृथिवी, सुखप्रद मित्रदेव र अति सुखदायी वरुणदेवलाई हामी वन्दना गर्दछौं। हे मानिसहरू हो ! इन्द्र, अग्नि, दीप्तिमान् अर्यमा र भगदेवको उपासना गर। त्यसबाट यी सबै देवताहरूको कृपाले हामी सबै चिरञ्जीवी भएर सन्तान र सबै खालका सुरक्षाका साधनले युक्त होऔं।

ऊती देवानां वयमिन्द्रवन्तो मंसीमहि स्वयशसो मरुद्भिः।
अग्निर्मित्रो वरुणः शर्म यंसन् तदश्याम मघवानो वयं च ॥७॥
देवताहरूले दिएको सुख हामी सबैले प्राप्त गरौं। आफ्नै यश र बलले सम्पन्न भएर देवकृपा पाउँदै सुरक्षित होऔं। अग्नि, मित्र तथा वरुणदेव हामीलाई सुखी बनाऊन्। यस्तो महान् ऐश्वर्यले युक्त भएर हामी सधैं सुखको उपभोग गरौं।

## [सूक्त - १३७]

ऋषि - परुच्छेप दैवोदासि। देवता - मित्रावरुण। छन्द - अतिशक्वरी।

सुषुमा यातमद्रिभिर्गोश्रीता मत्सरा इमे सोमासो मत्सरा इमे। आ राजाना दिविस्पृशास्मत्रा गन्तमुप नः। इमे वां मित्रावरुणा गवाशिरः सोमाः शुक्रा गवाशिरः ॥१॥
हे मित्र र वरुणदेव हो ! हामी यो सोमरस ढुङ्गाले किचेर निचोर्छौं। गाईको दुध मिसाएको सोम पक्का पनि आनन्ददायक छ। त्यसैले तिमीहरू दुवै हामीकहाँ आओ। हे मित्र र वरुणदेव हो ! पवित्र सामेरस गाईको दुध र पानी मिसाएर बनाइएको हो। यो तिमीहरूकै लागि तयार छ।

इम आ यातमिन्दवः सोमासो दध्याशिरः सुतासो दध्याशिरः। उत वामुषसो बुधि साकं सूर्यस्य रश्मिभिः। सुतो मित्राय वरुणाय पीतये चारुर्ऋताय पीतये ॥२॥
हे मित्र र वरुणदेव ! तिमीहरू दुवै पेलेर तयार गरिएको दुध र दही मिसाएको तेजस्वी सोमरस पान गर्न यहाँ आओ। तिमीहरूका लागि बिहान सूर्यरश्मि प्रकाशित हुँदाहुँदै यो सोमरस पेलेर तयार गरिएको हो। मित्र र वरुणदेवका लागि तयारी सोम प्रस्तुत छ।

तां वां धेनुं न वासरीमंशुं दुहन्त्यद्रिभिः सोमं दुहन्त्यद्रिभिः। अस्मत्रा गन्तमुप नोऽर्वाञ्चा सोमपीतये। अयं वां मित्रावरुणा नृभिः सुतः सोम आ पीतये सुतः ॥३॥
हे मित्र र वरुणदेव ! गाईको दुध दुहेझैं ऋत्विक्हरू ढुङ्गामा सोमवल्ली पेलेर तिमीहरूका लागि रस निचोर्दछन्। तिमीहरू दुवै हाम्रो संरक्षणका लागि सोमपान गर्न यहाँ आओ। हे मित्रावरुणदेव हो ! तिमीहरू दुवैले पान गर्न भनेर याज्ञिकले सोमरस निचोरेका हुन्।

[सूक्त - १३८]

ऋषि - परुच्छेप दैवोदासि। देवता - पूषा। छन्द - अत्यष्टि।

प्रप्र पूष्णस्तुविजातस्य शस्यते महित्वमस्य तवसो न तन्दते स्तोत्रमस्य न तन्दते। अर्चामि सुम्नयन्नहमन्त्यूतिं मयोभुवम्। विश्वस्य यो मन आयुयुवे मखो देव आयुयुवे मखः ॥१॥
शक्तिबाट उत्पन्न भएकाले पूषादेवको महिमा सबैले गाउँछन्। यिनको सामर्थ्य दबाउन सम्भव छैन र यिनको स्तुतिगान कहिल्यै घट्दैन। जुन देवता यज्ञकर्ताका मनमा परस्पर सहयोगको भावना जगाउँछन् र जो तेजयुक्त यज्ञलाई सम्पन्न गराउँछन्, यस्ता संरक्षण सामर्थ्यले युक्त सुखप्रदाता पूषादेवबाट अभीष्ट सुखको प्राप्ति होस् भनेर हामी उनलाई अर्चना गर्दछौं।

प्र हि त्वा पूषन्नजिरं न यामनि स्तोमेभिः कृण्व ऋणवो यथा मृध उष्ट्रो न पीपरो मृधः। हुवे यत्त्वा मयोभुवं देवं सख्याय मर्त्यः। अस्माकमाङ्गू-षान्द्युम्निनस्कृधि वाजेषु द्युम्निनस्कृधि ॥२॥
हे पूषादेव ! तीव्र गतिका अश्वलाई मानिसले प्रशंसा गर्दछन्। वीर योद्धालाई झैं त्यसलाई प्रोत्साहित गर्दै सङ्ग्रामतर्फ प्रयाण गराउँछन्। त्यस्तै किसिमले हामी स्तोत्र र वाणीले तिमीलाई प्रोत्साहित गर्दछौं। मरुस्थलमा उँटद्वारा यात्रीलाई आवतजावत गराएझैं तिमी हिंस्रक पशुबाट हामीलाई सुरक्षित गर। तिमी हाम्रा वाणीमा प्रखरता ल्याइदेऊ। सबै सङ्घर्षमा हामीलाई तेजयुक्त गराऊ। मैत्री भावनाका लागि सुखद हुनाले पूषादेवलाई हामी सबै मानिसहरू आह्वान गर्दछौं।

यस्य ते पूषन्सख्ये विपन्यवः क्रत्वा चित्सन्तोऽवसा बुभुज्रिर इति क्रत्वा बुभुज्रिरे। तामनु त्वा नवीयसीं नियुतं राय ईमहे। अहेडमान उरुशंस सरी भव वाजेवाजे सरी भव ॥३॥
हे पूषादेव ! तिम्रो मैत्री भावनाका ज्ञाता वीर पुरुषले आफ्नो पुरुषार्थ क्षमता र तिम्रो संरक्षणमा सबै उपभोग्य पदार्थ प्राप्त गर्दछन्। यस किसमले सबै मानिस आफ्ना पुरुषार्थले उपभोग्य सामग्री प्राप्त गर्नका लागि कसैको दयाका पात्र हुँदैनन्। त्यस उच्च बुद्धिको अनुशासनमा रहेर तिमीसित हामी धन आशा गर्दछौं। हे बहुसङ्ख्यकले स्तुति गरिने पूषादेव ! तिमी प्रत्येक सङ्घर्षशील सङ्ग्राममा हाम्रो सहयोग गर।

अस्या ऊ षु ण उप सातये भुवोऽहेडमानो ररिवाँ अजाश्व श्रवस्यतामजाश्व। ओ षु त्वा ववृतीमहि स्तोमेभिर्दस्म साधुभिः। नहि त्वा पूषन्नतिमन्य आघृणे न ते सख्यमपह्नुवे ॥४॥
हे पूषादेव ! हामीलाई वैभवसम्पन्न बनाउनका लागि प्रेमभावले दानदाता बनेर यहाँ आऊ। अन्नको इच्छा गर्ने हामीसमक्ष आऊ। हामी उच्च स्तवनले तिम्रो स्तुति गर्दछौं। हे जलवर्षक पूषादेव ! तिम्रो अनादर गर्नबाट हामी टाढा रहौं। तिम्रो मैत्रीबाट हामी वञ्चित नहोऔं।

[सूक्त - १३९]

ऋषि - परुच्छेप दैवोदासि। देवता - विश्वेदेवा बृहस्पति। छन्द - बृहती त्रिष्टुप्।

अस्तु श्रौषट् पुरो अग्निं धिया दध आ नु तच्छर्धो दिव्यं वृणीमह इन्द्रवायू वृणीमहे। यद्ध क्राणा विवस्वति नाभा सन्दायि नव्यसी। अध प्र सू न उप यन्तु धीतयो देवाँ अच्छा न धीतयः ॥१॥
हामीले अग्निदेवलाई बुद्धिपूर्वक धारण गरेका छौं। त्यस दिव्य प्रदीप्त ज्योतिको हामी आराधना गर्दछौं। नवीन याज्ञिक यज्ञवेदीमा आउँदा मनोरथ पूरा गराउने इन्द्रदेव र वायुदेवलाई हामी प्रार्थना गर्दछौं। हाम्रो स्तुति निश्चित नै देवताहरूसमक्ष पुगोस्। हाम्रो प्रार्थना पक्कै तिमीहरूसँग पुगोस्।

यद्ध त्यन्मित्रावरुणावृतादध्याददाथे अनृतं स्वेन मन्युना दक्षस्य स्वेन मन्युना। युवोरित्थाधि सद्मस्वपश्याम हिरण्ययम्। धीभिश्चन मनसा स्वेभिरक्षभिः सोमस्य स्वेभिरक्षभिः ॥२॥
हे मित्रावरुणहरू हो ! तिमीहरू दुवै आफ्ना सत्यको सामर्थ्यले असत्यवादीहरूलाई अनुशासित गर्दछौ र आफ्ना शक्तिसामर्थ्यले उनीहरूमाथि शासन गर्दछौ। त्यसैले तिमीहरू दुवैको स्वर्णिम तेजलाई आफ्नो बुद्धि, मन, इन्द्रियशक्ति र ज्ञानशक्तिद्वारा हामी प्रत्यक्ष देख्छौं।

युवां स्तोमेभिर्देवयन्तो अश्विनाश्रावयन्त इव श्लोकमायवो युवां हव्याभ्या३ यवः। युवोर्विश्वा अधि श्रियः पृक्षश्च विश्ववेदसा। प्रुषायन्ते वां पवयो हिरण्यये रथे दस्रा हिरण्यये ॥३॥
हे अश्विनीकुमारहरू हो ! देवताहरूप्रति श्रद्धा भावले युक्त मानिस स्तुतिद्वारा तिमीहरू दुईको यश गाउँछन्। श्रद्धावान् याजकले तिमीहरू दुवैलाई आह्वान गर्दछन्। तिमीहरू दुवै सर्वज्ञ हुनाले, समस्त वैभव सम्पदा र अन्न तिमीहरूमै आश्रित छन्। हे सुन्दर अश्विनीकुमारहरू हो ! सुन्दर सुनौला रथका पाङ्ग्राले तिमीहरूलाई बोक्छन्।

अचेति दस्रा व्यु१नाकमृण्वथो युञ्जते वां रथयुजो दिविष्टिष्वध्वस्मानो दिविष्टिषु। अधि वां स्थाम वन्धुरे रथे दस्रा हिरण्यये। पथेव यन्तावनुशासता रजोऽञ्जसा शासता रजः ॥४॥
हे सुन्दर अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै सारथीका रूपमा स्वर्गका मार्गमा, तीव्र गतिशील अश्व रथमा जोतेर स्वर्ग पुग्दछौं भन्ने गरिन्छ। हे उत्तम अश्विनीकुमारहरू हो ! तिमीहरूलाई हामी राम्ररी बाँधिएका सुनौला रथमा विराजित गराउँछौं। आफ्ना शक्तिले सम्पूर्ण लोकमाथि शासन गर्दै जलमा नियन्त्रण राखेर आफ्नो मार्गमा प्रस्थान गर।

शचीभिर्नः शचीवसू दिवा नक्तं दशस्यतम्।
मा वां रातिरुप दसत्कदा चनास्मद्रातिः कदा चन ॥५॥
हे पुरुषार्थयुक्त, वैभवसम्पन्न अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै हाम्रा असल कर्मले प्रसन्न भएर हामीलाई निरन्तर धन प्रदान गर। तिमीहरूबाट दिइएको ऐश्वर्यमा कहिल्यै कमी नहोस्। हाम्रा सार्थक सहयोगमा पनि कहिल्यै कमी नआओस्।।

वृषन्निन्द्र वृषपाणास इन्दव इमे सुता अद्रिषुतास उद्भिदस्तुभ्यं सुतास उद्भिदः। ते त्वा मन्दन्तु दावने महे चित्राय राधसे। गीर्भिर्गिर्वाहः स्तवमान आ गहि सुमृळीको न आ गहि ॥६॥
हे इन्द्रदेव ! बलतागत प्राप्त गर्नका लागि पान गर्नयोग्य यो सोमरस ढुङ्गामा पेलेर राखिएको छ। यो सोमरस तिमीले पान गर्नका लागि प्रशोधित गरिएको हो। सुन्दर, महान् वैभव प्रदान गर्ने सोमरसले उत्साहित गरोस्। हे प्रशंसनीय इन्द्रदेव ! वाणीद्वारा गरिएका प्रार्थनाले तिमी यहाँ आऊ। प्रसन्नतापूर्वक हामीकहाँ उपस्थित होऊ।

ओ षू णो अग्ने शृणुहि त्वमीळितो देवेभ्यो ब्रवसि यज्ञियेभ्यो राजभ्यो यज्ञियेभ्यः। यद्ध त्यामङ्गिरोभ्यो धेनुं देवा अदत्तन। वि तां दुह्रे अर्यमा कर्तरी सचाँ एष तां वेद मे सचा ॥७॥
हे अग्निदेव ! हाम्रा प्रार्थनाले प्रसन्न भएर निवेदनमाथि ध्यान देऊ। अति पूजनीय देदीप्यमान देवतासित, हे देवता हो ! तिमीहरूले अङ्गिरालाई गाई दियौ, ती गाई एकत्र गरेर अर्यमाले दुहे, यस्ता गाईसित अर्यमा र हामी परिचित छौं भन।

मो षु वो अस्मदभि तानि पौंस्या सना भूवन्द्युम्नानि मोत जारिषुरस्मत्पुरोत जारिषुः। यद्वश्चित्रं युगेयुगे नव्यं घोषादमर्त्यम्। अस्मासु तन्मरुतो यच्च दुष्टरं दिधृता यच्च दुष्टरम् ॥८॥
हे मरुत्गण हो ! तिमीहरूको उहिलेदेखिको पराक्रमी सामर्थ्य हामी कहिल्यै नबिसौं। हाम्रो कीर्ति सधैं अक्षुण रहोस् र हाम्रा सहरहरू नष्ट नहोऊन्। आश्चर्यप्रद, स्तुतियोग्य र अमृतरूपी रस प्रदान गर्ने गाईहरूसित सम्बन्धित तथा सबै मानिसहरूका लागि जुन धनसम्पदा हुन्छन्, ती सबै युगौंयुगसम्म हामीसितै रहिरहून्। दुःखसित प्राप्त हुने खालका जुन सम्पदाहरू छन्, तिनीहरू पनि हामीलाई प्रदान गर।

दध्यङ्ङ मे जनुषं पूर्वो अङ्गिराः प्रियमेधः कण्वो अत्रिर्मनुर्विदुस्ते मे पूर्वे मनुर्विदुः। तेषां देवेष्वायतिरस्माकं तेषु नाभयः। तेषां पदेन मह्या नमे गिरेन्द्राग्नी आ नमे गिरा ॥९॥
उहिलेका दध्यङ्, अङ्गिरा, प्रियमेध, कण्व, अत्रि र मनु आदि सबै ऋषिहरूले मानिसका जन्मका विषयमा सबै कुरा जान्दछन्। उनीहरू हाम्रा मननशील र ज्ञानी पुर्खालाई चिन्दछन्। ती ऋषिहरूको देवताहरूका साथ अति निकटस्थ सम्बन्ध छ। साधारण मानिस देवताबाट ऊर्जाशक्ति प्राप्त गर्दछन्। देवताहरूका अनुगामी बनेर हामी हृदयदेखि नै उनीहरूलाई प्रणाम गर्दछौं। हामी स्तोत्रले इन्द्र र अग्निको प्रार्थना गर्छौं।

होता यक्षद्वनिनो वन्त वार्यं बृहस्पतिर्यजति वेन उक्षभिः पुरुवारेभिरुक्षभिः। जगृभ्मा दूर आदिशं श्लोकमद्रेरध त्मना। अधारयदररिन्दानि सुक्रतुः पुरू सद्मानि सुक्रतुः ॥१०॥
यज्ञकर्ताहरूले यज्ञबाट विभिन्न कामना पूर्ति गरून्। कल्याणकारी बृहस्पतिले विभिन्न सामर्थ्यप्रद

मानिसहरूबाट रुचाएको सोमयज्ञ सम्पन्न गराऊन्। दाढाबाट ढुङ्गामा सोमवल्ली कुटेको ध्वनि आइरहेको हामी सुन्दै छौं। सत्कर्म रूपी यज्ञीय कार्य गर्ने मानिस जल र अन्नले भरपूर रहन्छन्। श्रद्धालु मनले याज्ञिकहरू मनग्गे वैभवयुक्त घरहरूले सुशोभित रहन्छन्।

**ये देवासो दिव्येकादश स्थ पृथिव्यामध्येकादश स्थ।**
**अप्सुक्षितो महिनैकादश स्थ ते देवासो यज्ञमिमं जुषध्वम् ॥११॥**

हे देवताहरू हो ! तिमीहरू पृथ्वी, अन्तरिक्ष र देवलोक यी तीनै लोकमा एघारएघारको सङ्ख्यामा छौ। हे देवताहरू ! तिमीहरू सबै आहुतिहरू ग्रहण गर।

## [सूक्त - १४०]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - अग्नि। **छन्द** - जगती त्रिष्टुप्।

**वेदिषदे प्रियधामाय सुद्युते धासिमिव प्र भरा योनिमग्नये।**
**वस्त्रेणेव वासया मन्मना शुचिं ज्योतीरथं शुक्रवर्णं तमोहनम् ॥१॥**

हे ऋत्विक्‌हरू हो ! यज्ञवेदीमा विराजमान सुन्दर प्रकाशवान्, श्रेष्ठ कान्तियुक्त प्रखर अग्नि प्रज्वलित गर्नका लागि समिधा र हविष्यान्न समर्पित गर। पवित्र रथजस्तै प्रकाश हुने, तेजस्वी र अन्धकार विनाशक अग्निदेवलाई वस्त्रले ढाकेझैं स्तोत्रले पूरै ढाक।

**अभि द्विजन्मा त्रिवृदन्नमृज्यते संवत्सरे वावृधे जग्धमी पुनः।**
**अन्यस्यासा जिह्वया जेन्यो वृषा न्यन्येन वनिनो मृष्ट वारणः ॥२॥**

दुई विधिले प्रकट हुने अग्निदेव तीन किसिमले अन्न ग्रहण गर्छन्। अग्निले ग्रहण गरेको अन्न प्रतिवर्ष बारम्बार बढ्छ। अग्निदेव जठराग्निका रूपमा भक्षण गर्छन् र दावानलका रूपमा जङ्गलका वृक्षलाई जलाउँछन्।

**कृष्णप्रुतौ वेविजे अस्य सक्षिता उभा तरेते अभि मातरा शिशुम्।**
**प्राचाजिह्वं ध्वसयन्तं तृषुच्युतमा साच्यं कुपयं वर्धनं पितुः ॥३॥**

अग्नि प्रज्वलन गर्दा काला भएका अग्निमन्थरूपी दुई माता कम्पित हुन्छन्। गतिमान् ज्वालारूपी जिह्वा भएका, अन्धकार नाश गर्ने, शीघ्र ज्वलनशील, याजकसँग रहने र विशेष यत्नले रक्षित अग्निले यजमानलाई पाल्दछन्। याजकहरू समृद्धि बढाउनका लागि आफूलाई पालन गर्ने शिशुरूप अग्निलाई प्रकट गर्दछन्।

**मुमुक्ष्वो३ मनवे मानवस्यते रघुद्रुवः कृष्णसीतास ऊ जुवः।**
**असमना अजिरासो रघुष्यदो वातजूता उप युज्यन्त आशवः ॥४॥**

मोक्षदाता, तीव्र गतिशील, कालो धुवाँको मुस्लोलाई मार्ग बनाएर त्यसै मार्गमा हिँड्ने, विभिन्न रङ्गमा देखिने, शीघ्रगामी, वायुका प्रभावमा रहेका र सर्वत्र व्याप्त अग्निदेव उन्नतिशील मानिसका लागि यज्ञीय कार्यमा विशेष उपयोगी छन्।

**आदस्य ते ध्वसयन्तो वृथेरते कृष्णमभ्वं महि वर्पः करिक्रतः।**
**यत्सीं महीमवनिं प्राभि मर्मृशदभिश्वसन्त्स्तनयन्नेति नानदत् ॥५॥**

अग्निदेव गर्जन गर्दै, श्वास लिँदै, उच्च शब्दमा आकाश थर्काउँदै र विशाल पृथ्वीलाई सबै दिशाबाट छुँदै प्रज्वलित हुन्छन्। अग्निका ज्योतिको ज्वालो अँध्यारा मार्गमा प्रकाश छर्दै ठूलो प्रयास नै नगरी सजिलै सर्वेतिर प्रकाशित हुन्छ।

**भूषन्न योऽधि बभ्रुषु नम्नते वृषेव पत्नीरभ्येति रोरुवत्।**
**ओजायमानस्तन्वश्च शुम्भते भीमो न शृङ्गा दविधाव दुर्गृभिः ॥६॥**

अग्निदेव पहेंलो वर्णका औषधीलाई सुशोभित गराउनका लागि प्रवेश हुन्छन् र साँढे डुक्रिएझैं शब्द गर्दै पत्नीजस्ता आज्ञा पालक औषधी र वनस्पति खान थाल्दछन्। अति तेजयुक्त भएर ज्वालारूपी आफ्नो शरीर टल्काउँछन्। विकराल रूप लिएर साँढेका भयङ्कर सिङजस्तै ज्वाला घुमाउँछन्।

**स संस्तिरो विष्टिरः सं गृभायति जानन्नेव जानतीर्नित्य आ शये।**
**पुनर्वर्धन्ते अपि यन्ति देव्यमन्यद्वर्पः कृण्वते सचा ॥७॥**

अग्निदेव कहिले प्रत्यक्ष, कहिले अप्रत्यक्ष रूपले औषधीमा आफ्नो सामर्थ्य व्याप्त गर्दछन्। प्रकट रूपमा अग्निका अविच्छिन्न ज्वाला सर्वोच्च दिव्यलोकतिर बढ्छन्। ती ज्वालाहरू आफ्ना पितारूप अग्निसँग पृथ्वी र अन्तरिक्षमा विविध रूपमा रहन्छन्।

तमग्रुवः केशिनीः सं हि रेभिर ऊर्ध्वास्तस्थुर्मम्रुषीः प्रायवे पुनः।
तासां जरां प्रमुञ्चन्नेति नानददसुं परं जनयञ्जीवमस्तृतम् ॥८॥

लामो कपालजस्तो ज्वालाले सबै तिरबाट अग्निलाई स्पर्श गरेको हुन्छ। यो ज्वाला मृतजस्तो भए पनि अग्निको सम्पर्क भएपछि मास्तिर फर्किएर दन्किन्छ। अग्निदेवले ज्वालाको जीर्णता समाप्त गरेर सामर्थ्य र जीवन्त पार्दै गर्जना गर्दछन्।

अधीवासं परि मात्रो रिहन्नह तुविग्रेभिः सत्वभिर्याति वि ज्रयः।
वयो दधत्पद्वते रेरिहत्सदानु श्येनी सचते वर्तनीरह ॥९॥

धर्ती माताको तृणरूपी वस्त्र खाँदै अग्निदेव विजयशील प्राणीतिर वेगसित जान्छन्। यिनले मानिस र पशु अन्नरूपी प्राण दिन्छन्। अग्निदेव सधैं तृण आदि जलाउँदै जुन मार्गमा जान्छन्, त्यो मार्ग कालो बनाउँछन्।

अस्माकमग्ने मघवत्सु दीदिह्यध श्वसीवान्वृषभो दमूनाः।
अवास्या शिशुमतीरदीदेर्वर्मेव युत्सु परिजर्भुराणः ॥१०॥

हे अग्निदेव ! हाम्रो ऐश्वर्यसम्पन्न घर प्रकाशित गराऊ। त्यसपछि सशक्त शत्रुलाई पराजित गराऊ। हाम्रा लागि रक्षा कवचजस्तै उपयोगी होऊ। श्वास फेर्ने बालकले बाल्यावस्था त्यागेर युवक भएझैं सङ्ग्राममा सक्रिय हौ। बारम्बार शत्रुलाई पर लखेट्दै विशेष दीप्तिले प्रकाशित भइदेऊ।

इदमग्ने सुधितं दुर्धितादधि प्रियादु चिन्मन्मनः प्रेयो अस्तु ते।
यत्ते शुक्रं तन्वो३ रोचते शुचि तेनास्मभ्यं वनसे रत्नमा त्वम् ॥११॥

हे अग्निदेव ! तिमीलाई हामीले निवेदन गरेका स्तोत्र अरूका भन्दा उत्तम होऊन्। यी स्तोत्रले तिम्रो तेज वृद्धि होस्। रत्नस्वरूप सुन्दर सम्पदा हामी प्राप्त गरौं।

रथाय नावमुत नो गृहाय नित्यारित्रां पद्वतीं रास्यग्ने।
अस्माकं वीराँ उत नो मघोनो जनाँश्च या पारयाच्छर्म या च ॥१२॥

हे अग्निदेव ! हाम्रो घरपरिवार र महारथी वीरहरूलाई यज्ञीय सत्कर्मरूपी सुदृढ नौका प्रदान गर। त्यस नौकाले हाम्रा शूरवीर, धनीमानी र अन्य मानिसलाई संसाररूपी सागर तार्न सकोस्। हामीलाई उत्तम सुखसम्पदा प्रदान गर।

अभी नो अग्न उक्थमिज्जुगुर्या द्यावाक्षामा सिन्धवश्च स्वगूर्ताः।
गव्यं यव्यं यन्तो दीर्घाहेषं वरमरुण्यो वरन्त ॥१३॥

हे अग्निदेव ! हाम्रा स्तोत्रले राम्रोसित तिम्रो प्रशंसा गरोस्। अन्तरिक्ष, पृथिवी र स्वयं प्रवाहित नदीले हामीलाई गाईबाट उत्पन्न दुध र अन्न प्रदान गरुन्। त्यसका अतिरिक्त अरुण वर्णका उषाहरूले हामीलाई उत्तम अन्न र बल सामर्थ्यले परिपूर्ण गराऊन्।

### [सूक्त - १४१]

ऋषि - दीर्घतमा औचथ्य। देवता - अग्नि। छन्द - जगती त्रिष्टुप्।

बळित्था तद्वपुषे धायि दर्शतं देवस्य भर्गः सहसो यतो जनि।
यदीमुप ह्वरते साधते मतिर्ऋतस्य धेना अनयन्त सस्रुतः ॥१॥

मानिसहरू देहको सुदृढताका लागि दिव्य अग्निको रमणीय तेज धारण गर्दछन्। त्यो तेज बलबाट उत्पन्न हुन्छ। अग्निदेवको यस्तो प्रसिद्ध र उपयोगी तेज हाम्रा विवेक बुद्धिले ग्रहण गरुन्। त्यसबाट हाम्रो अभीष्ट पूर्ति होस्। सबै प्राणीले अग्निदेवकै प्रार्थना गर्दछन्।

पृक्षो वपुः पितुमान्नित्य आ शये द्वितीयमा सप्तशिवासु मातृषु।
तृतीयमस्य वृषभस्य दोहसे दशप्रमतिं जनयन्त योषणः ॥२॥

अग्निका पहिलो भौतिक रूपले अन्न पकाउने र शरीर पोल्ने काम गर्छ। दोस्रो रूप मेघमा रहेको विद्युत् हो र त्यसले सात लोकको हित गर्दछ। तेस्रो रूपमा रहेका बलशाली अग्निदेव सूर्यका रूपमा रहेर सबै रसहरूलाई दोहन गर्दछन्। दसैं दिशामा महान् यी अग्निदेवलाई औंलाले मन्थन गरेर उत्पन्न गर्दछन्।

निर्यदीं बुध्नान्महिषस्य वर्पस ईशानासः शवसा क्रन्त सूरयः।
यदीमनु प्रदिवो मध्व आधवे गुहा सन्तं मातरिश्वा मथायति ॥३॥

ऋत्विक्‌हरू विशाल अग्निमन्थका मूल भाग समातेर मन्थन गर्दै अग्नि प्रकट गर्दछन्। उहिले नै

सोमयज्ञमा आहुति दिनका लागि अप्रकट अग्निलाई विद्वान् मातरिश्वाले यसरी नै मन्थन गरेर प्रकट गरेका थिए। त्यसैले उनको स्तुति सबैले गर्दछन्।

**प्र यत्पितुः परमान्नीयते पर्या पृक्षुधो वीरुधो दंसु रोहति।**
**उभा यदस्य जनुषं यदिन्वत आदिद्यविष्ठो अभवद्घृणा शुचिः ॥४॥**

सबैका असल पालक अग्निदेव सबै तिरबाट प्रज्वलित भएका बेला समिधा ग्रहण गर्न इच्छुक देखिन्छन्। अग्निदेवका ज्वालारूपी दाँतमा वृक्ष आदि अर्पित गरिन्छ। दुई वटा अग्निमन्थहरू अग्नि उत्पादन गर्ने प्रयत्न गर्दछन्। अनि पवित्र अग्निदेव प्रकट भएर तेजस्वी र बलशाली हुन्छन्।

**आदिन्मातॄराविशद्यास्वा शुचिरहिंस्यमान उर्विया वि वावृधे।**
**अनु यत्पूर्वा अरुहत्सनाजुवो नि नव्यसीष्ववरासु धावते ॥५॥**

अग्निदेवको सामर्थ्य प्रकट भएपछि मातृरूपी दसै दिशामा व्याप्त हुन्छ। निर्बाध रूपले सबै दिशामा अग्नि फैलिए। उहिलेदेखिको स्थायी औषधी र नयाँ रूपमा उम्रेका औषधीको गुण विनाका वनस्पतिमा पनि अग्नि व्याप्त हुँदै छन्।

**आदिद्धोतारं वृणते दिविष्टिषु भगमिव पपृचानास ऋञ्जते।**
**देवान्यत्क्रत्वा मज्मना पुरुष्टुतो मर्तं शंसं विश्वधा वेति धायसे ॥६॥**

याजकहरूले यज्ञमा आहुति ग्रहण गर्ने अग्निदेवलाई वरण गरे र वैभवसम्पन्न राजाजस्तै रूपमा प्रसन्न गराए। यसबाट आनन्दित भएका अग्निदेव उर्जाशक्तिले सम्पन्न भए। ठूला यज्ञमा हवि सेवन गर्नका लागि देवताहरूलाई अग्निदेवले आह्वान गरे।

**वि यदस्थाद्यजतो वातचोदितो ह्वारो न वक्वा जरणा अनाकृतः।**
**तस्य पत्मन्दक्षुषः कृष्णजंहसः शुचिजन्मनो रज आ व्यध्वनः ॥७॥**

बहुभाषी, प्रशंसनीय उपहासयुक्त वचन भएका विदूषकले विनाअवरोध सारा गाउँ नै हँसाएझैं वायुद्वारा गतिमान् अग्निदेव सर्वत्र व्याप्त छन्। आफ्ना ज्वलनशीलताले सबै कुरो जलाउने, पवित्र रूपमा उत्पन्न, बहुमार्गगामी र हिँडिसकेका मार्गमा कालो छोड्ने अग्निदेवको मार्ग सबै लोकले अनुगमन गर्दछन्।

**रथो न यातः शिक्वभिः कृतो द्यामङ्गेभिररुषेभिरीयते।**
**आदस्य ते कृष्णासो दक्षि सूरयः शूरस्येव त्वेषथादीषते वयः ॥८॥**

कुशल कारिगरले बनाएर चलाएको रथजस्तै अग्निदेवको ज्वाला वेगशील छ। उनी दिव्यलोकतिर प्रस्थान गर्दछन्। अग्निदेव जाँदा उनको मार्ग पूरै कालो हुन्छ। किनभने उनी काठ डढाउँछन्। वीरसित डराएर शत्रु भागेझैं, अग्निको ज्वाला देखेर पक्षी पनि भाग्दछन्।

**त्वया ह्यग्ने वरुणो धृतव्रतो मित्रः शाशद्रे अर्यमा सुदानवः।**
**यत्सीमनु क्रतुना विश्वथा विभुररान्न नेमिः परिभूरजायथाः ॥९॥**

हे अग्निदेव ! तिम्रा सामर्थ्यले नै वरुणदेव व्रतहरू निर्वाह गर्दै, सूर्यदेव अन्धकार हटाउँदै र अर्यमादेव असल दान गर्दै आआफ्ना नियम पालन गर्दछन्। हे अग्निदेव ! सबैतिर कर्तव्यपरायणताद्वारा विश्वात्मास्वरूप र सर्वशक्तिमान् रूपमा छौ। पाङ्ग्राले रथ अड्याएझैं तिमी सर्वत्र व्यापक भएर सबैको नियम बनाउँछौ।

**त्वमग्ने शशमानाय सुन्वते रत्नं यविष्ठ देवतातिमिन्वसि।**
**तं त्वा नु नव्यं सहसो युवन्वयं भगं न कारे महिरत्न धीमहि ॥१०॥**

हे अत्यन्त तरुण अग्निदेव ! स्तोता र सोम निकाल्ने यजमानका लागि ऐश्वर्यप्रद उत्तम धन प्राप्त गर्न तिमी प्रेरणा दिन्छौ। शक्तिका पुत्र, तरुण, महिमामय र रत्नरूपी हे अग्निदेव ! पूजा उपासनाका समयमा हामी राजाको जस्तै तिम्रो अर्चना गर्दछौं।

**अस्मे रयिं न स्वर्थं दमूनसं भगं दक्षं न पपृचासि धर्णसिम्।**
**रश्मीँरिव यो यमति जन्मनी उभे देवानां शंसमृत आ च सुक्रतुः ॥११॥**

हे अग्निदेव ! हाम्रा लागि गृहस्थ जीवनसित सम्बन्धित एवं उपयोगी सम्पत्ति दिनुका साथै वैभवशाली, अति कुशल सहयोगी आफन्तहरू देऊ। तिमी आफ्नो जन्मका कारण आकाश र भूलोक दुवैलाई लगाम लगाएझैं आफ्ना नियन्त्रणमा राख्दछौ। यस्ता श्रेष्ठ कर्मशील तिमीलाई यज्ञमा उपस्थित ज्ञानीहरूले प्रशंसा गर्दछन्।

उत न: सुद्योत्मा जीराश्वो होता मन्द्रः शृणवच्चन्द्ररथः।
स नो नेषन्नेषतमैरमूरोऽग्निर्वामं सुवितं वस्यो अच्छ ॥१२॥

तेजवान्, वेगशील अश्वले युक्त, देववाहक, सुखदायी स्वर्णिम रथयुक्त, अपराजेय शक्तिसम्पन्न तथा प्रसन्नताजस्ता दैवी गुणहरूले विभूषित अग्निदेवले हाम्रो प्रार्थना सुन्लान् ? सत्कर्मका प्रेरणाले हामीलाई परम सौभाग्य पक्कै प्रदान गर्लान् ?

अस्ताव्यग्निः शिमीवद्भिरर्कैः साम्राज्याय प्रतरं दधानः।
अमी च ये मघवानो वयं च मिहं न सूरो अति निष्टतन्युः ॥१३॥

साम्राज्यका लागि श्रेष्ठ तेज धारण गर्ने अग्निदेव प्रभावकारी स्तोत्रका वाणीले सबैबाट प्रशंसित हुन्छन्। सूर्यदेवले बादलमा शब्दको ध्वनि उत्पन्न गरेझैं यी ऋत्विकहरू, हामी यजमान र अन्य वैभवशालीहरू उच्च स्वरले अग्निदेवको प्रार्थना गर्दछन्।

[सूक्त - १४२]

ऋषि - दीर्घतमा औचथ्य। देवता - अग्नि सरस्वती इडा इन्द्र। छन्द - त्रिष्टुप्।

समिद्धो अग्न आ वह देवाँ अद्य यतस्रुचे।
तन्तुं तनुष्व पूर्व्यं सुतसोमाय दाशुषे ॥१॥

हे अग्निदेव ! तिमी प्रज्वलित भएर हविदाता र यजमानका लागि देवताहरूको आह्वान गर। सोम तयार गर्ने, दानी यजमानका लागि प्राचीन यज्ञको सम्पादन गर्न आफ्नो ज्वाला बढाऊ।

घृतवन्तमुप मासि मधुमन्तं तनूनपात्।
यज्ञं विप्रस्य मावतः शशमानस्य दाशुषः ॥२॥

शरीरको आरोग्यता बढाउने हे अग्निदेव ! तिम्रा प्रशंसक तथा दानदाता हौं। हामी ब्रह्मनिष्ठ विद्वान्ले गर्ने मधुर तथा तेजस्वी यज्ञमा आएर तिमी प्रतिष्ठित होऊ।

शुचिः पावको अद्भुतो मध्वा यज्ञं मिमिक्षति।
नराशंसस्त्रिरा दिवो देवो देवेषु यज्ञियः ॥३॥

हे अग्निदेव ! तिमी देवताहरूबाट पूजनीय, मानिसहरूबाट प्रशंसनीय पवित्र रहेर अर्कालाई पनि पवित्र गर्ने, आश्चर्यप्रद र तेजस्वी छौ। तिमी मधुर रस रूपी यज्ञलाई दिनमा तीन पटक सेचन गर।

ईळितो अग्न आ वहेन्द्रं चित्रमिह प्रियम्।
इयं हि त्वा मतिर्ममाच्छा सुजिह्व वच्यते ॥४॥

हे अग्निदेव ! तिमी प्रशंसित भएर विलक्षण कर्म गर्ने प्रिय इन्द्रदेवलाई हाम्रा यस यज्ञमा लिएर आऊ। हे सुन्दर ज्वालारूपी जिब्रोयुक्त अग्निदेव ! हाम्रो बुद्धिले सधैं तिम्रो प्रार्थना गर्दछ।

स्तृणानासो यतस्रुचो बर्हिर्यज्ञे स्वध्वरे।
वृञ्जे देवव्यचस्तममिन्द्राय शर्म सप्रथः ॥५॥

सुरो लिएका ऋत्विकगण ठूलो यज्ञमा कुशका आसन फैलाउँछन्। उनीहरू देवतालाई आह्वान गर्ने, विशाल यज्ञस्थल इन्द्रदेवका लागि शोभायमान गर्दछन्।

वि श्रयन्तामृतावृधः प्रयै देवेभ्यो महीः।
पावकासः पुरुस्पृहो द्वारो देवीरसश्चतः ॥६॥

महिमायुक्त, यज्ञको विकास गर्ने, पवित्र, सबैका प्रिय तटस्थ रहेका दिव्यद्वार, देवत्व प्राप्तिका लागि यहाँ स्थित होऊ।

आ भन्दमाने उपाके नक्तोषासा सुपेशसा।
यह्वी ऋतस्य मातरा सीदतां बर्हिरा सुमत् ॥७॥

मिलनसार, राम्रो स्वरूप भएका, महिमामय, यज्ञकर्म सिद्ध गर्ने, पारस्परिक सहयोगका प्रतीक रात्रि र उषा हाम्रा सम्बन्धमा उच्च विचार गर्दै यस यज्ञमा विराजमान होऊन्।

मन्द्रजिह्वा जुगुर्वणी होतारा दैव्या कवी।
यज्ञं नो यक्षतामिमं सिध्रमद्य दिविस्पृशम् ॥८॥

वाणी प्रयोग गर्ने, मेधावी, उच्चारण विद्यामा प्रवीण, दैवी गुणले सम्पन्न यज्ञ गर्ने, नयाँ विशिष्ट आध्यात्मिक ज्ञानको उपलब्धिबाट देवत्व पद प्राप्त गराउनेहरू हाम्रा देवयज्ञमा उपस्थित भएर यज्ञ सम्पन्न गराऊन्।

शुचिर्देवेष्वर्पिता होत्रा मरुत्सु भारती।
इडा सरस्वती मही बर्हिः सीदन्तु यज्ञियाः ॥९॥

देवता र मरुत्गणमा पूजनीय, पवित्र यज्ञ निर्वाहक होतारूपी सरस्वती, भारती र इडा यस यज्ञमा उपस्थित होऊन्।

तन्नस्तुरीपमद्भुतं पुरु वारं पुरु त्मना।
त्वष्टा पोषाय वि ष्यतु राये नाभा नो अस्मयुः ॥१०॥

हाम्रा हितैषि, निर्माता हे त्वष्टादेव ! हामी सबैले इच्छा गरेको, शीघ्र प्रवाहित हुने, अन्तरिक्षमा रहेको, अद्भुत मेघबाट जलवृष्टि गरेर सबैका लागि पौष्टिक अन्न र ऐश्वर्य तिमी प्रदान गर।

अवसृजन्नुप त्मना देवान्यक्षि वनस्पते।
अग्निर्हव्या सुषूदति देवो देवेषु मेधिरः ॥११॥

हे वनका अधिपति ! यज्ञ कर्मका प्रेरणाबाट देवताहरूका निम्ति अग्नि प्रज्वलित गर। ज्ञानवान् अग्निदेवलाई समर्पित आहुति सूक्ष्मरूप भएर देवताहरूसम्म पुग्दछ।

पूषण्वते मरुत्वते विश्वदेवाय वायवे।
स्वाहा गायत्रवेपसे हव्यमिन्द्राय कर्तन ॥१२॥

हामी पूषादेव र मरुत्गणका साथ सर्वदेव समूहम रहने वायुदेवका लागि र गायत्री साधकहरूका संरक्षक इन्द्रदेवका लागि उत्तम हवि समर्पित गरौं।

स्वाहाकृतान्या गह्युप हव्यानि वीतये।
इन्द्रा गहि श्रुधी हवं त्वां हवन्ते अध्वरे ॥१३॥

हे इन्द्रदेव ! तिमी श्रद्धाको भावनाले समर्पित गरिएको आहुति ग्रहण गर्न यहाँ आऊ। यज्ञीय सत्कर्म गर्ने मानिसहरू तिमीलाई आह्वान गरिरहेका छन्। उनीहरूको निवेदन सुनेर सहयोगका लागि अवश्य आऊ।

[सूक्त - १४३]

ऋषि - दीर्घतमा औचथ्य। देवता - अग्नि। छन्द - जगती त्रिष्टुप्।

प्र तव्यसीं नव्यसीं धीतिमग्नये वाचो मतिं सहसः सूनवे भरे।
अपां नपाद्यो वसुभिः सह प्रियो होता पृथिव्यां न्यसीददृत्वियः ॥१॥

शक्तिका पुत्र, जलका संरक्षक अग्निदेव सबैका प्रिय छन् र ऋतु विचार गरेर यज्ञ कर्म सम्पादन गर्दछन्। उनी ऐश्वर्यसहित पृथ्वीमाथि यज्ञवेदीमा प्रतिष्ठित हुन्छन्। यस्ता अग्निदेवका निमित्त हामी नवीनतम असल प्रार्थना अर्पित गर्दछौं।

स जायमानः परमे व्योमन्याविरग्निरभवन्मातरिश्वने।
अस्य क्रत्वा समिधानस्य मज्मना प्र द्यावा शोचिः पृथिवी अरोचयत् ॥२॥

तेजसम्पन्न अग्निदेव, मातरिश्वा वायुका कारण उच्च अन्तरिक्षमा पहिले उत्पन्न भए। उत्तम विधिले प्रज्वलित हुने अग्निदेवका शक्तिसामर्थ्यले दिव्यलोक र भूलोक पनि प्रकाशमान भए।

अस्य त्वेषा अजरा अस्य भानवः सुसन्दृशः सुप्रतीकस्य सुद्युतः।
भात्वक्षसो अत्यक्तुर्न सिन्धवोऽग्ने रेजन्ते अससन्तो अजराः ॥३॥

अग्निको प्रचण्ड तेज कहिल्यै जीर्ण हुँदैन। सुन्दर मुख भएको यिनको तेज किरण सबैतिर व्याप्त रूपमा प्रकाशित हुन्छ। दीप्ति र शक्तिले सम्पन्न अग्निको ज्वाला रातको अन्धकार पार गर्दै सधैं निर्भयपूर्वक जागृत तथा क्षयरहित रहन्छ।

यमेरिरे भृगवो विश्ववेदसं नाभा पृथिव्या भुवनस्य मज्मना।
अग्निं तं गीर्भिर्हिनुहि स्व आ दमे य एको वस्वो वरुणो न राजति ॥४॥

अग्निदेव पनि वरुणदेवजस्तै एक्लौटी ऐश्वर्यका अधिपति हुन्। भृगुवंशी ऋषिहरूका सामर्थ्यले उनलाई प्रतिष्ठित गराएको हो। विश्वभरिका प्राणीको हित र पृथ्वीको ऐश्वर्य वृद्धिका लागि अग्निदेवलाई आआफ्ना घरमा उत्तम प्रार्थनाका साथ प्रज्वलित गरौं।

न यो वराय मरुतामिव स्वनः सेनेव सृष्टा दिव्या यथाशनिः।
अग्निर्जम्भैस्तिगितैरत्ति भर्वति योधो न शत्रून्त्स वना न्यृञ्जते ॥५॥

अग्निदेव पनि मरुत्गणको जस्तै भीषण गर्जना गर्दछन्। उनी आक्रमण गर्न तयार पराक्रमी

सेनाजस्तो वा आकाशको वज्रास्त्रजस्तो अवरोधविहीन छन्। योद्धाले शत्रु विनाश गरेझैं अग्निदेव आफ्ना तीव्र ज्वालारूपी तिखा दाँतले वन भस्म पार्दछन्।

**कुविन्नो अग्निरुचथस्य वीरसद्वसुष्कुविद्वसुभिः काममावरत्।**
**चोदः कुवित्तुतुज्यात्सातये धियः शुचिप्रतीकं तमया धिया गृणे ॥६॥**

अग्निदेव हाम्रा पवित्र स्तोत्रतर्फ विशेष रुचिले प्रेरित होउन् र सबैले आश्रय लिने धनद्वारा हाम्रो लक्षित कामना पूर्ण गरुन्। उनी हाम्रो कल्याणका निम्ति उचित कर्ममा प्रेरणा बारम्बार प्रदान गरुन्। हामी आफ्ना निर्मल भावनाले उत्तम ज्योतिका रूपमा रहेका अग्निदेवलाई प्रार्थना गर्दछौं।

**घृतप्रतीकं व ऋतस्य धूर्षदमग्निं मित्रं न समिधान ऋञ्जते।**
**इन्धानो अक्रो विदथेषु दीद्यच्छुक्रवर्णामुदु नो यंसते धियम् ॥७॥**

हामी यज्ञकर्ताहरू घिउले प्रज्वलित अग्निदेवलाई मित्रसमान मानेर प्रदीप्त र सुशोभित गर्दछौं। अग्निदेव उच्च प्रकाशयुक्त दीप्तिले सम्पन्न छन् र यज्ञमा प्रज्वलित गरिँदा मानिसलाई उच्च भावनाको प्रखरता दिन्छन्।

**अप्रयुच्छन्नप्रयुच्छद्भिरग्ने शिवेभिर्नः पायुभिः पाहि शग्मैः।**
**अदब्धेभिरदृपितेभिरिष्टेऽनिमिषद्भिः परि पाहि नो जाः ॥८॥**

हे अग्निदेव ! तिमी निरन्तर आलस्यरहित, व्यवधानरहित, हितकारक र सुखदायी साधनले हामीलाई संरक्षण प्रदान गर। हे पूजनीय अग्निदेव ! तिमी अनिष्टरहित भएर पीडा र आलस्यविना हाम्रा सन्तानलाई पनि राम्ररी सुरक्षा प्रदान गर।

**[सूक्त – १४४]**

**ऋषि** – दीर्घतमा औचथ्य। **देवता** – अग्नि। **छन्द** – जगती।

**एति प्र होता व्रतमस्य माययोर्ध्वां दधानः शुचिपेशसं धियम्।**
**अभि स्रुचः क्रमते दक्षिणावृतो या अस्य धाम प्रथमं ह निंसते ॥१॥**

विशेष ज्ञानवान् याज्ञिक आफ्नो उच्च निर्मल भावना लिएर अग्निदेवका निर्धारित व्रत अनुशासनको अनुसरण गर्दछन्। त्यसपछि ती याज्ञिकहरू हवि प्रदान गर्नका लागि उपयोगी स्रुवे हातमा लिन्छन्। स्रुवे लिएका हात विशेष शोभायुक्त हुन्छन्।

**अभीमृतस्य दोहना अनूषत योनौ देवस्य सदने परीवृताः।**
**अपामुपस्थे विभृतो यदावसदध स्वधा अधयद्याभिरीयते ॥२॥**

जलधारा अग्निको मूल स्थान दिव्यलोकलाई ढाक्दै अग्निदेव आनन्दपूर्वक रहन्छन्। वर्षा रूपमा जल धर्तीमा आउने प्रयासमा अग्निदेवलाई प्रार्थना गर्दछ। अग्निदेव आफ्ना किरणले जल वर्षा गर्दछन्। त्यस अमृतरूपी जललाई सबैले सेवन गर्दछन्। जलका रूपमा अन्तरिक्षबाट आउने वर्षा अग्निजस्तै प्राणदायी हुन्छ। त्यो पहिले वनस्पतिमा पर्छ र त्यसपछि सबै प्राणीमा समाविष्ट हुन्छ।

**युयूषतः सवयसा तदिद्वपुः समानमर्थं वितरित्रता मिथः।**
**आदीं भगो न हव्यः समस्मदा वोळ्हुर्न रश्मीन्त्समयंस्त सारथिः ॥३॥**

अग्नि उत्पन्न गर्नका लागि समान सामर्थ्य भएका दुई अग्निमन्थ स्थापना गरेर एकै चोटि राम्रोसित आपसमा घोटिन्छन्। अग्नि प्रज्वलित भएपछि यजन गरिन्छ। हामीले प्रदान गरेको घिउको धारा सबैतिरबाट अग्निदेवले ग्रहण गर्दछन्। त्यति बेला सारथीले लगामद्वारा अश्व नियन्त्रण गरेझैं लाग्दछ।

**यमीं द्वा सवयसा सपर्यतः समाने योना मिथुना समोकसा।**
**दिवा न नक्तं पलितो युवाजनि पुरू चरन्नजरो मानुषा युगा ॥४॥**

एकै उमेरका, उसै ठाउँमा बस्ने, उही काममा लागेका, दुई वटा जुम्ल्याहाले अग्निलाई यज्ञ कार्यद्वारा रातोदिन अर्चना गर्दछन्। उनीहरूबाट पूजा गरिएका अग्निदेव बढ्छन् तर वृद्ध हुँदैनन्। उनी अनेकौं युगदेखि सञ्चरित छन् तापनि कहिल्यै पुराना हुँदैनन्।

**तमीं हिन्वन्ति धीतयो दश व्रिशो देवं मर्तास ऊतये हवामहे।**
**धनोरधि प्रवत आ स ऋण्वत्यभिव्रजद्भिर्वयुना नवाधित ॥५॥**

दस वटा औंला छुट्टाछुट्टै भए तापनि सबै सँगै भएर प्रकाशको स्रोत अग्नि प्रकट गर्छन्। हामी सबै मानिस आआफ्नो संरक्षणका लागि अग्निदेवलाई आह्वान गर्दछौं। धनुषबाट वाण निस्केझैं

अग्निदेव प्रज्वलित हुन्छन्। चारैतिर उपस्थित भएर आफ्नो स्तुति गाउनेहरूले प्रस्तुत गरेका नयाँ प्रार्थना ग्रहण गर्दछन्।

**त्वं ह्यग्ने दिव्यस्य राजसि त्वं पार्थिवस्य पशुपा इव त्मना।**
**एनी त एते बृहती अभिश्रिया हिरण्ययी वक्वरी बर्हिराशाते ॥६॥**

हे अग्निदेव ! तिमी दिव्यलोक र पृथ्वीलोकका अधिपति हौ। गाई आदि पशु पाल्ने गोठालोझैं आफ्ना सामर्थ्यले पालन गर्दछौ। व्यापक, ऐश्वर्यसम्पन्न, स्वर्णमय, मङ्गल शब्द गर्ने, शुभ्र वर्णका अग्नि दिव्यलोक र भूलोकका प्रख्यात यज्ञमा उपस्थित हुन्छन्।

**अग्ने जुषस्व प्रति हर्य तद्वचो मन्द्र स्वधाव ऋतजात सुक्रतो।**
**यो विश्वतः प्रत्यङ्ङसि दर्शतो रण्वः सन्दृष्टौ पितुमाँ इव क्षयः ॥७॥**

प्रशंसायोग्य, अन्नले भरपूर, यज्ञका लागि उत्पन्न, श्रेष्ठ कर्मशील हे अग्निदेव ! तिमी समस्त जड़चेतन आदि संसारका लागि अनुकूल दर्शनयोग्य, पितासमान पालक, नेत्रमा शक्ति दिने र सबैका आश्रयस्थान हौ। तिमी प्रसन्न भएर बारम्बार स्तोत्र श्रवण गर।

## [सूक्त - १४५]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - अग्नि। **छन्द** - जगती त्रिष्टुप्।

**तं पृच्छता स जगामा स वेद स चिकित्वाँ ईयते सा न्वीयते।**
**तस्मिन्त्सन्ति प्रशिषस्तस्मिन्निष्टयः स वाजस्य शवसः शुष्मिणस्पतिः ॥१॥**

हे मानिसहरू हो ! सबैले अग्निदेवसित सोध। उनी सर्वत्र गमनशील, सर्वज्ञाता, ज्ञानवान्, निश्चित् रूपमा सर्वव्यापक हुन्। उनीभित्रै प्रशासनको सामर्थ्य र सबै अभीष्ट पदार्थ छन्। तिनै अग्निदेव अन्न, बल र शक्तिको साधनका स्वामी हुन्।

**तमित्पृच्छन्ति न सिमो वि पृच्छति स्वेनेव धीरो मनसा यदग्रभीत्।**
**न मृष्यते प्रथमं नापरं वचोऽस्य क्रत्वा सचते अप्रदृपितः ॥२॥**

ज्ञानसम्पन्नले नै जिज्ञासा प्रकट गर्दछन्। सर्वसाधारणले सोध्न जान्दैनन्। धैर्यवान् मानिस निर्धारित अवधिभन्दा पहिले नै काम सम्पन्न गर्दछन्। उनीहरू कसैका भनाइलाई अनावश्यक महत्त्व दिँदैनन्। त्यसैले अहङ्काररहित मानिसले अग्निदेवको सामर्थ्य प्राप्त गर्दछ।

**तमिद् गच्छन्ति जुह्वः स्तमर्वतीर्विश्वान्येकः शृणवद्वचांसि मे।**
**पुरुप्रैषस्ततुरिर्यज्ञसाधनोऽच्छिद्रोतिः शिशुरादत्त सं रभः ॥३॥**

बिउका चमसले तिनै अग्निदेवलाई आहुति प्रदान गरिन्छ र प्रार्थना पनि उनैका निमित्त गरिन्छ। उनी एक्लै नै हाम्रा स्तोत्रका सम्पूर्ण वाणी श्रवण गर्दछन्। सामर्थ्य सम्पन्न अग्निदेव अनकौंका लागि प्रेरणाप्रद, दुःखनिवारक, यज्ञसाधक र पवित्र संरक्षक हुन्। अग्निदेव शिशुझैं स्नेहयुक्त भई आहुति ग्रहण गर्दछन्।

**उपस्थायं चरति यत्समारत सद्यो जातस्तत्सार युज्येभिः।**
**अभि श्वान्तं मृशते नान्द्यो मुदे यदीं गच्छन्त्युशतीरपिष्ठितम् ॥४॥**

ऋत्विक्गणले प्रकट गर्नका लागि प्रयत्नशील भएपछि अग्निदेव शीघ्र प्रदीप्त भएर सबैतिर फैलिन्छन्। सर्वत्र व्याप्त यज्ञका अग्निमा आहुति दिंदा उत्साही यजमानलाई अग्निदेव अभीष्ट फल प्रदान गरेर प्रोत्साहित गर्दछन्।

**स ईं मृगो अप्यो वनर्गुरुप त्वच्युपमस्यां नि धायि।**
**व्यब्रवीद्वयुना मर्त्येभ्योऽग्निर्विद्वाँ ऋतचिद्धि सत्यः ॥५॥**

वनमा विचरणशील, अनुसन्धान र उपलब्ध गर्न योग्य अग्निदेव उत्तम समिधामा स्थापित हुन्छन्। मेधावी, यज्ञको ज्ञान भएका, सत्ययुक्त अग्निदेव वास्तवमै मनुष्यलाई यज्ञकर्ममा प्रेरित गर्दै दिव्य ज्ञानको सन्देश दिन्छन्।

## [सूक्त - १४६]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

**त्रिमूर्धानं सप्तरश्मिं गृणीषेऽनूनमग्निं पित्रोरुपस्थे।**
**निषत्तमस्य चरतो ध्रुवस्य विश्वा दिवो रोचनापप्रिवांसम् ॥१॥**

हे मानिस हो ! मातापिताजस्ता पृथ्वी र दिव्यलोकका काखमा बसेका, तीन शिरयुक्त, सात

छन्दका, साल ज्वालायुक्त, सबैलाई पूर्णता प्रदान गर्ने अग्निदेवलाई तिमीहरू सबैले प्रार्थना गर। दिव्यलोकबाट सञ्चरित हुने अग्निको दिव्य तेजसमूह जडचेतन सबै सृष्टिमा व्याप्त भइरहेको छ।

**उक्षा महाँ अभि ववक्ष एने अजरस्तस्थावितऊतिर्ऋष्वः।**
**उर्व्याः पदो नि दधाति सानौ रिहन्त्यूधो अरुषासो अस्य ॥२॥**

महान् शौर्यशाली अग्निदेव यस द्युलोक र पृथ्वीलोकलाई सबै तिरबाट ढाक्दछन्। सधैं युवा रहने यी पूजनीय अग्निदेव आफ्ना संरक्षण साधनहरूले सम्पन्न भएर विराजमान छन्। भूमिका थाप्लामा आफ्ना गोडा राखेर उभिएका यिनका प्रदीप्त ज्वालाहरू आकाशमा सर्वत्र फैँजिन्छन्।

**समानं वत्समभि सञ्चरन्ती विष्वग्धेनू वि चरतः सुमेके।**
**अनपवृज्याँ अध्वनो मिमाने विश्वान्केताँ अधि महो दधाने ॥३॥**

अग्निरूपी एउटै पुत्र जन्माउने, मार्ग देखाउँदै उनलाई हिँड्न योग्य गराउने, सबै किसिमका ज्ञान सम्पदालाई व्यापक रूपमा धारण गर्ने, उत्तम र दर्शन योग्य दुई वटा गाईहरू चारैतिर विचरण गर्दछन्।

**धीरासः पदं कवयो नयन्ति नाना हृदा रक्षमाणा अजुर्यम्।**
**सिषासन्तः पर्यपश्यन्त सिन्धुमाविरेभ्यो अभवत्सूर्यो नॄन् ॥४॥**

धैर्ययुक्त र मेधावी मानिस, विभिन्न प्रकारका साधनले भावनापूर्वक अग्निको रक्षा गर्दै उनलाई सुरक्षित स्थानमा लैजान्छन्। अग्निको कामना गर्ने मानिसले समुद्रको जल चारै तिरबाट हेरेपछि यिनीहरूका लागि प्रकाशका रूपमा सूर्य प्रकट भए।

**दिदृक्षेण्यः परि काष्ठासु जेन्य ईळेन्यो महो अर्भाय जीवसे।**
**पुरुत्रा यदभवत्सूरहैभ्यो गर्भेभ्यो मघवा विश्वदर्शतः ॥५॥**

सबै दिशामा व्याप्त र सधैं विजयी हुनाले अग्निदेव प्रशंसायोग्य छन्। सानाठूला सबै प्राणीलाई यिनले जीवनशक्ति दिन्छन्। त्यसैले विभिन्न सम्पदाका स्वामी र सबैका प्रकाशक अग्निदेव बीज रूपमा रोपिने पदार्थको उत्पत्तिका मूल कारण हुन्।

[सूक्त - १४७]

ऋषि - दीर्घतमा औचथ्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**कथा ते अग्ने शुचयन्त आयोर्ददाशुर्वाजेभिराशुषाणाः।**
**उभे यत्तोके तनये दधाना ऋतस्य सामत्रणयन्त देवाः ॥१॥**

हे अग्निदेव ! यज्ञका माध्यमबाट वायुमण्डल सफा गर्ने, सर्वत्र प्रकाश फैँजाउने तिम्रो ज्वाला कसरी पोषक अन्नले जीवनतत्त्व प्रदान गर्दछ ?

**बोधा मे अस्य वचसो यविष्ठ मंहिष्ठस्य प्रभृतस्य स्वधावः।**
**पीयति त्वो अनु त्वो गृणाति वन्दारुस्ते तन्वं वन्दे अग्ने ॥२॥**

सुहाउँदो तरुण रूप भएका, वैभवशाली हे अग्निदेव ! हामीले बारम्बार गरेको महिमायुक्त निवेदन तिमी स्वीकार गर। तिम्रा कोही निन्दक छन् भने कोही प्रशंसक छन्। हामी स्तोताहरू स्वाभाविक रूपमा तिम्रा प्रज्वलित ज्योतिलाई वन्दना गर्दछौं।

**ये पायवो मामतेयं ते अग्ने पश्यन्तो अन्धं दुरितादरक्षन्।**
**ररक्ष तान्सुकृतो विश्ववेदा दिप्सन्त इद्रिपवो नाह देभुः ॥३॥**

हे अग्निदेव ! प्रख्यात किरणले ममताका अन्ध पुत्रलाई देख्ने बनायौ। ज्ञानसम्पन्न लोकहितका कार्य गर्नेहरूलाई तिमीले संरक्षण प्रदान गर्‍यौ। अहङ्कारी र दुष्कर्मीले तिमीलाई प्रभावित गर्न सकेनन्।

**यो नो अग्ने अररिवाँ अघायुररातीवा मर्चयति द्वयेन।**
**मन्त्रो गुरुः पुनरस्तु सो अस्मा अनु मृक्षीष्ट तन्वं दुरुक्तैः ॥४॥**

हे अग्निदेव ! दुष्कर्ममा लागेका पापीले हामीलाई सार्थक दान दिनमा बाधा पार्दै छन्। उनीहरू यज्ञ कर्ममा सहयोग गर्दैनन् र छलपूर्ण चालले हामीलाई दुःख दिन्छन्। तिनीहरूका छलरूपी सबै योजना र उनीहरू आफ्नै कारणले विनाश होऊन्। अर्कालाई नराम्रो ठान्ने मासिऊन्।

उत वा यः सहस्य प्रविद्वान्मर्तो मर्तं मर्चयति द्वयेन।
अतः पाहि स्तवमान स्तुवन्तमग्ने माकिर्नो दुरिताय धायीः ॥५॥

शक्तिका पुत्र हे अग्निदेव ! जुन मानिस हामीलाई धोका र दुःख दिन्छन् तिनीहरूबाट हामी उपासकहरूलाई जोगाओ। हे स्तुति गर्न योग्य अग्निदेव ! हामीलाई दुष्कर्मरूपी पापको दुःखमा पिल्सनबाट जोगाऊ।

[सूक्त - १४८]

ऋषि – दीर्घतमा औचथ्य। देवता – अग्नि। छन्द – त्रिष्टुप्।

मथीद्यदीं विष्टो मातरिश्वा होतारं विश्वाप्सुं विश्वदेव्यम्।
नि यं दधुर्मनुष्यासु विक्षु स्वर्णं चित्रं वपुषे विभावम् ॥१॥

देवताहरूलाई आह्वान गर्ने, देख्नमा राम्रा, देवताहरूका सबै यज्ञ कर्ममा कुशल उनै अग्निदेवलाई मातरिश्वाले मन्थनबाट उत्पन्न गरेर सर्वव्यापक गराए। सूर्यदेवझैं विचित्र तेजसम्पन्न अग्निदेवलाई पोषणका लागि मानिसका शरीरमा प्रतिष्ठित गराइयो। हामी उनको प्रार्थना गरौं।

ददानमित्र ददभन्त मन्माग्निर्वरूथं मम तस्य चाकन्।
जुषन्त विश्वान्यस्य कर्मोपस्तुतिं भरमाणस्य कारोः ॥२॥

अग्निदेवको स्तुति गर्ने हामी याजकलाई शत्रुले पीडित गर्न सक्दैन, किनभने अग्निदेव हाम्रा स्तोत्रका मङ्गल कामनाले प्रेरित छन्। हामी स्तोताहरूको प्रार्थना र सबै सत्कर्म सम्पूर्ण देवशक्तिले ग्रहण गर्दछन्।

नित्ये चिन्नु यं सदने जगृभ्रे प्रशस्तिभिर्दधिरे यज्ञियासः।
प्र सू नयन्त गृभयन्त इष्टावश्वासो न रथ्यो रारहाणाः ॥३॥

अग्निदेवलाई याजकगण प्रत्येक दिन यज्ञगृहमा शीघ्रतापूर्वक स्तुति गर्दै प्रतिष्ठित गराउँछन्। याजकगण तीव्रगामी रथका घोडाझैं यज्ञको अग्नि विकसित गर्छन्।

पुरूणि दस्मो नि रिणाति जम्भैराद्रोचते वन आ विभावा।
आदस्य वातो अनु वाति शोचिरस्तुर्न शर्यामसनामनु द्यून् ॥४॥

अग्निदेव ज्वालारूपी दाँतले रुखबिरुवा नष्ट गर्दछन्। उनी जङ्गलमा सबैतिर प्रकाश छर्दछन्। अग्निका ज्वालाका नजिकैबाट अनुकूलता पाएर बाण छोडेझैं वेगवान् वायु अगाडि बहन्छ।

न यं रिपवो न रिषण्यवो गर्भे सन्तं रेषणा रेषयन्ति।
अन्धा अपश्या न दभन्नभिख्या नित्यास ईं प्रेतारो अरक्षन् ॥५॥

गर्भमा रहेका अग्निदेवलाई शत्रुले दुःख दिन सक्दैनन्। अज्ञानी, दृष्टिविहीन र ज्ञानको दम्भ गर्नेहरूले तिनको महिमा कम गराउन सक्दैन। अग्निदेवलाई नित्य यज्ञकर्मले सन्तुष्ट गर्ने मानिस सुरक्षित रहन्छन्।

[सूक्त - १४९]

ऋषि – दीर्घतमा औचथ्य। देवता – अग्नि। छन्द – विराट्।

महः स राय एषते पतिर्दन्निन इनस्य वसुनः पद आ।
उप ध्रजन्तमद्रयो विधन्नित् ॥१॥

हामीलाई धनसम्पदा प्रदान गर्नका लागि अग्निदेव हाम्रा यज्ञमा आएका बेला ढुङ्गामा पेलेर तयार गरिएको सोमरसले उनको अभिनन्दन गरिन्छ।

स यो वृषा नरां न रोदस्योः श्रवोभिरस्ति जीवपीतसर्गः।
प्र यः सस्राणः शिश्रीत योनौ ॥२॥

शक्तिशाली पुरुषजस्ता अग्निदेव द्युलोक र भूलोकमा यशस्वी भएका छन्। प्राणीलाई सुहाउने किसिमले उनी सृष्टिको रचना गर्दछन्। प्रकाशयुक्त भएर उनी यज्ञवेदीमा स्थापित हुन्छन्।

आ यः पुरं नार्मिणीमदीदेदत्यः कविर्नभन्यो३ नार्वा।
सूरो न रुरुक्वाञ्छतात्मा ॥३॥

अग्निदेव यजमानहरूबाट निर्माण गरिएका यज्ञवेदीमा प्रदीप्त गराइन्छन्। द्रुतगामी वायुसमान गति भएको घोडाजस्ता र दूरद्रष्टा हुन्। अनेकौं रूपमा सुशोभित अग्निदेव सूर्यदेवझैं तेजसम्पन्न छन्।

अभि द्विजन्मा त्री रोचनानि विश्वा रजांसि शुशुचानो अस्थात्।
होता यजिष्ठो अपां सधस्थे ॥४॥

द्विजन्मा एवं त्रिरोचन अग्निदेव सारा विश्वलाई प्रकाशित गर्दछन्। होताजस्ता अग्निदेव जलका बीचमा पनि विद्यमान् छन्।

अयं स होता यो द्विजन्मा विश्वा दधे वार्याणि श्रवस्या।
मर्तो यो अस्मै सुतुको ददाश ॥५॥

दुई अग्निमन्थबाट उब्जिएका अग्निदेवलाई आह्वान गर्नेहरू सबैले असल धन र यश कमाउँछन्। अग्निदेव आफ्ना याजकहरूलाई असल सम्पत्ति प्रदान गर्दछन्।

[सूक्त - १५०]

ऋषि - दीर्घतमा औचथ्य। देवता - अग्नि। छन्द - उष्णिक्।

पुरु त्वा दाश्वान्वोचेऽरिरग्ने तव स्विदा। तोदस्येव शरण आ महस्य ॥१॥

अग्निदेव महान् सम्पत्तिशालीका शरणमा आएकाहरूको सेवकजस्तै छन्। हामीहरू उनका लागि आहुति प्रदान गर्दै स्तुति गान गर्दछौं।

व्यनिनस्य धनिनः प्रहोषे चिदररुषः। कदा चन प्रजिगतो अदेवयोः ॥२॥

हे अग्निदेव ! धनले सम्पन्न भए तापनि श्रद्धाहीन, कृपण र देवताको अनुशासन नमान्ने स्वेच्छाचारी नास्तिकलाई तिमी आफ्ना कृपादृष्टिबाट वञ्चित गराऊ।

स चन्द्रो विप्र मर्त्यो महो व्राधन्तमो दिवि। प्रप्रेत्ते अग्ने वनुषः स्याम ॥३॥

हे ज्ञानसम्पन्न अग्निदेव ! जुन मानिस तिम्रा शरणमा आउँछन् उनीहरू तिम्रा तेजले दिव्यलोकका चन्द्रमाजस्तै सबैका लागि सुखदायक हुन्छन्। उनीहरू सबैभन्दा बढी महान् हुन्छन्। त्यसैले हामी सधैं तिमीप्रति श्रद्धाको भावनाले भरिपूर्ण छौं।

[सूक्त - १५१]

ऋषि - दीर्घतमा औचथ्य। देवता - मित्रावरुण। छन्द - जगती।

मित्रं न यं शिम्या गो षु गव्यवः स्वाध्यो विदथे अप्सु जीजनन्।
अरेजेतां रोदसी पाजसा गिरा प्रति प्रियं यजतं जनुषामवः ॥१॥

सम्मान र स्नेहयुक्त अग्निदेवलाई सम्पूर्ण मानवको रक्षाका लागि गाईका कामनाले प्रेरित भएका ठूला ज्ञानीहरूले मित्रका रूपमा आफ्ना यज्ञरूपी सत्कर्मले प्रकट गरे। उनको ध्वनि र तेजपूर्ण शक्तिले दिव्यलोक र पृथ्वी कम्पायमान हुन्छन्।

यद्ध त्यद्वां पुरुमीळ्हस्य सोमिनः प्र मित्रासो न दधिरे स्वाभुवः।
अध क्रतुं विदतं गातुमर्चत उत श्रुतं वृषणा पस्त्यावतः ॥२॥

हे शक्तिसम्पन्न मित्र र वरुणदेवता ! तिमीहरू दुईका मित्रसमान हितैषि ऋत्विक्गणले आफ्ना सामर्थ्यले अनेकौं सुख दिने सोमरस अर्पित गरेका छन्। त्यसैले तिमीहरू दुवै स्तोताको गुण, कर्म, स्वभाव बुझ र सद्गृहस्थ यजमानका प्रार्थनामा ध्यान देऔ।

आ वां भूषन्क्षितयो जन्म रोदस्योः प्रवाच्यं वृषणा दक्षसे महे।
यदीमृताय भरथो यदर्वते प्र होत्रया शिम्या वीथो अध्वरम् ॥३॥

हे शक्तिसम्पन्न मित्र र वरुणदेवताहरू हो ! पृथ्वीवासीहरू दक्षता प्राप्तिका लागि द्यावा, पृथ्वीबाट उत्पन्न तिमीहरू दुईको प्रशंसा गर्दछन् र स्तोत्रले अलङ्कृत गर्छन्। तिमीहरू असल साधक र दैवी नियम पालन गर्नेलाई सामर्थ्य प्रदान गर्दछौं। तिमीहरू निमन्त्रणा गर्दा र सत्कर्मबाट आकर्षित भएर यज्ञमा उपस्थित हुन्छौ।

प्र सा क्षितिरसुर या महि प्रिय ऋतावानावृतमा घोषथो बृहत्।
युवं दिवो बृहतो दक्षमाभुवं गां न धुर्युप युञ्जाथे अपः ॥४॥

हे बलशाली मित्र र वरुणदेव हो ! तिमीहरूका लागि विशेष प्रिय ठाउँ ज्यादै विस्तृत होस्। हे यज्ञीय कर्म पालन गर्ने देवताहरू हो ! तिमीहरू दुवै निर्भीकतापूर्वक महान् सत्य ज्ञानको प्रचार गर। महान् दैवी गुण बढाउनका लागि तिमीहरू दुवै सामर्थ्ययुक्त र कल्याणकारी कर्ममा हलोमा गोरु जोतिएझैं लागिदेऊ।

महो अत्र महिना वारमृण्वथोऽरेणवस्तुज आ सद्मन्धेनवः ।
स्वरन्ति ता उपरताति सूर्यमा निम्रुच उषसस्तक्ववीरिव ॥५॥

हे मित्र र वरुणदेवहरू हो ! तिमीहरू दुवै विस्तृत पृथ्वीमा आफ्ना प्रभाव क्षमताले धारण गर्न योग्य उत्तम धन प्रदान गर्दछौ र पवित्र गाई दिन्छौ। चोर देखेपछि मानिस कराएझैं उषाकालमा आकाश मण्डलमा बादल भरिएपछि ती गाईहरू सूर्यदेवकै नाम लिएर कराउँछन्।

आ वामृताय केशिनीरनूषत मित्र यत्र वरुण गातुमर्चथः ।
अव त्मना सृजतं पिन्वतं धियो युवं विप्रस्य मन्मनामिरज्यथः ॥६॥

हे मित्र र वरुणदेवहरू हो ! तिमीहरूको प्रार्थना गाइएका ठाउँमा अग्निका ज्वालामा यज्ञकार्य गर्नका लागि तिमीहरू दुवै सहयोग गर्दछौ। तिमीहरू हाम्रो बौद्धिक क्षमता पुष्ट गरेर सामर्थ्यशक्ति प्रदान गर। तिमीहरू दुवै ज्ञानसम्पन्न विद्वान्का अधिपति हौ।

यो वां यज्ञैः शशमानो ह दाशति कविर्होता यजति मन्मसाधनः ।
उपाह तं गच्छथो वीथो अध्वरमच्छा गिरः सुमतिं गन्तमस्मयू ॥७॥

हे मित्र र वरुणदेव हो ! विद्वान् याजकहरूले प्रार्थना गर्दै तिमीहरू दुईलाई आहुति प्रदान गर्दछन्। तिनीहरूका नजिक गएर तिमी यज्ञीय कर्मको अभिलाषा गर्दछौ। त्यसैले तिमीहरू दुवै हामीतिर फर्किएर हाम्रो स्तोत्र र असल भावना स्वीकार गर।

युवां यज्ञैः प्रथमा गोभिरञ्जत ऋतावाना मनसो न प्रयुक्तिषु ।
भरन्ति वां मन्मना संयता गिरोऽदृप्यता मनसा रेवदाशाथे ॥८॥

हे सत्यसम्पन्न मित्र र वरुणदेव हो ! जसरी इन्द्रियमध्ये मन सबैभन्दा ठूलो छ, उसै गरी देवताहरूमा तिमीहरू दुवै ठूला छौ तिमीहरूलाई याजकले दुध, घिउ आदिको आहुति दिएर सन्तुष्ट गराउँछन्। उनीहरूलाई तिमीहरू ऐश्वर्यसम्पदा प्रदान गर्दछौ।

रेवद्वयो दधाथे रेवदाशाथे नरा मायाभिरितऊति माहिनम् ।
न वां द्यावोऽहभिर्नोत सिन्धवो न देवत्वं पणयो नानशुर्मघम् ॥९॥

हे नेतृत्वसम्पन्न मित्र र वरुणदेव हो ! तिमीहरू दुवै आफ्ना शक्तिले हामीलाई सुरक्षित गर्दै वैभवपूर्ण उपयोगी सम्पदा प्रदान गर्दछौ। तिमीहरू दुवैको दैवी क्षमता र सम्पदा दिव्यलोक, अहोरात्र, नदीहरू र पणि नामका असुरसमूहले पनि पाउन सकेनन्।

[सूक्त - १५२]

ऋषि - दीर्घतमा औचथ्य। देवता - मित्रावरुण। छन्द - त्रिष्टुप्।

युवं वस्त्राणि पीवसा वसाथे युवोरच्छिद्रा मन्तवो ह सर्गाः ।
अवातिरतमनृतानि विश्व ऋतेन मित्रावरुणा सचेथे ॥१॥

हे मित्र र वरुणदेव हो ! तिमीहरू दुवै परिपुष्ट भएर तेजस्वी वस्त्र धारण गर्दछौ। तिमीहरूले बनाएका सबै वस्तुहरू दोषरहित र विचार गर्न योग्य छन्। तिमीहरू दुवै असत्यको निवारण गरेर मनुष्यलाई सत्यको बाटोमा संलग्न गराउँछौ।

एतच्चन त्वो वि चिकेतदेषां सत्यो मन्त्रः कविशस्त ऋघावान् ।
त्रिरश्रिं हन्ति चतुरश्रिरुग्रो देवनिदो ह प्रथमा अजूर्यन् ॥२॥

मित्र र वरुणदेवमध्ये जुनसुकै एक देव भए पनि विशेष ज्ञानवान्, सत्यप्रति सुदृढ, क्रान्तदर्शीहरूले स्तुति गर्ने र सामर्थ्यसम्पन्न छन्। द्रष्टा ऋषिहरू यसबाट विज्ञ छन्। ती वीर पराक्रमीले त्रिधारा र चतुर्धारायुक्त शास्त्र विनाश गरिदिन्छन्। दैवी अनुशासनको अवहेलना गर्नेहरू पहिले सामर्थ्यशालीजस्ता देखिए पनि आखिरमा प्रभावक्षमता गुमाएर विनाश नै हुन्छन्।

अपादेति प्रथमा पद्वतीनां कस्तद्वां मित्रावरुणा चिकेत ।
गर्भो भारं भरत्या चिदस्य ऋतं पिपर्त्यनृतं नि तारीत् ॥३॥

हे मित्र र वरुणदेव ! विनागोडाकी उषा, खुट्टा भएका प्राणीभन्दा पहिले आइपुग्छिन्। गर्भबाट उत्पन्न हुँदै शिशु सूर्य, संसारको पालनपोषणरूपी दायित्व निर्वाह गर्दछन्। यिनै सूर्यदेव असत्यरूपी अन्धकारलाई हटाएर सत्यरूपी आलोक फैलाउँछन्।

प्रयन्तमित्परि जारं कनीनां पश्यामसि नोपनिपद्यमानम्।
अनवपृग्णा वितता वसानं प्रियं मित्रस्य वरुणस्य धाम ॥४॥

सर्वत्र व्यापक र तेजस्वी प्रकाश धारण गरेका सूर्यदेव आफ्नै पत्नी उषाको कान्ति धमिल्याउँदै मित्र र वरुणदेवका प्रिय धामतर्फ सधैँ गतिशील भइरहेका देखिन्छन्। उनी कहिल्यै अडिँदैनन्।

अनश्वो जातो अनभीशुरर्वा कनिक्रदत्पतयदूर्ध्वसानुः।
अचित्तं ब्रह्म जुजुषुर्युवानः प्र मित्रे धाम वरुणे गृणन्तः ॥५॥

अश्व र लगाम आदि साधनविना सूर्यदेव गतिमान् छन्। उदाएर शब्द निकाल्दै उच्च शिखरमा रश्मि फिँजाउँछन्। मित्र र वरुणदेवका तेजको गुण गाउँदै युवा साधकहरू सूर्यदेवलाई विशेष रूपले स्तुति गर्दछन्।

आ धेनवो मामतेयमवन्तीर्ब्रह्मप्रियं पीपयन्त्सस्मिन्नूधन्।
पित्वो भिक्षेत वयुनानि विद्वानासाविवासन्नदितिमुरुष्येत् ॥६॥

रक्षकजस्ता गाईले आफ्नै ममतायुक्त स्रोतले उपासकलाई पोषण दिऊन्। सद्ज्ञान सम्पन्न विद्वान्ले उचित पोषण मागून्। उपासना गर्ने साधकले मृत्यु जितून्।

आ वां मित्रावरुणा हव्यजुष्टिं नमसा देवाववसा ववृत्याम्।
अस्माकं ब्रह्म पृतनासु सह्या अस्माकं वृष्टिर्दिव्या सुपारा ॥७॥

हे दीप्तिमान् मित्र र वरुणदेव हो ! हामीले विनम्रतापूर्वक गाएको स्तोत्र सुनेर तिमीहरू दुवै यहाँ आओ। आहुति ग्रहण गरेर सङ्ग्राममा विजयी बनाओ र दिव्य दृष्टिद्वारा हामीलाई अनिकाल र दुःखदेखि मुक्त गराओ।

[सूक्त - १५३]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - मित्रावरुण। **छन्द** - त्रिष्टुप्।

यजामहे वां महः सजोषा हव्येभिर्मित्रावरुणा नमोभिः।
घृतैर्घृतस्नू अध यद्वामस्मे अध्वर्यवो न धीतिभिर्भरन्ति ॥१॥

परस्पर प्रीतियुक्त, विशेष तेजस्वी हे मित्रवरुणदेव हो ! हाम्रा ऋत्विक्हरू स्तोत्रगान गर्दै छन्। हामी यजमान महानतायुक्त तिमीहरू दुवैप्रति हव्यसहित नमन गर्दछौँ।

प्रस्तुतिर्वां धाम न प्रयुक्तिरयामि मित्रावरुणा सुवृक्तिः।
अनक्ति यद्वां विदथेषु होता सुम्नं वां सूरिर्वृषणावियक्षन् ॥२॥

हे मित्र र वरुणदेवहरू हो ! हामी कुरा गर्न कुशल छौँ तिमीहरू दुवैलाई प्रार्थना गर्दछौँ। ज्ञानी याजकहरू घरको हेरचाह गरेजस्तै तिमीहरूको ध्यान र स्तुति गर्दछन्। उनीहरू आनन्दको कामना गर्दछन्।

पीपाय धेनुरदितिर्ऋताय जनाय मित्रावरुणा हविर्दे।
हिनोति यद्वां विदथे सपर्यन्त्स रातहव्यो मानुषो न होता ॥३॥

हवि प्रदान गर्ने मननशील होताले तिमीहरूको अर्चना गर्दै यज्ञमा आहुति दिन्छन्। हे मित्र र वरुणदेव हो ! सत्य मार्गमा अडिग र हविष्य प्रदान गर्ने साधकलाई गाईले हरेक किसिमका सुखसाधन प्रदान गर्दछन्।

उत वां विक्षु मद्यास्वन्धो गाव आपश्च पीपयन्त देवीः।
उत नो अस्य पूर्व्यः पतिर्दन्वीतं पातं पयस उस्रियायाः ॥४॥

हे मित्र र वरुणदेवहरू हो ! तिमीहरू दुवै अन्न, दुधालु गाई र जल दिएर मानिसलाई आनन्दित र सन्तुष्ट गराओ। यज्ञका अधिष्ठाता अग्निदेवले वैभव सम्पदा प्रदान गरुन्। याजकहरू ऐश्वर्यशाली भएर घिउको आहुति प्रदान गरुन्।

[सूक्त - १५४]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - विष्णु। **छन्द** - त्रिष्टुप्।

विष्णोर्नु कं वीर्याणि प्र वोचं यः पार्थिवानि विममे रजांसि।
यो अस्कभायदुत्तरं सधस्थं विचक्रमाणस्त्रेधोरुगायः ॥१॥

पृथ्वी, अन्तरिक्ष र द्युलोकका निर्माता, देवताहरूको निवासस्थान द्युलोकलाई स्थिर गराउने, तीन खुट्टाले तीनै लोकमा विचरण गर्ने विष्णुदेवका वीरतापूर्ण कार्यको वर्णन कतिसम्म गरौँ ?

प्र तद्विष्णुः स्तवते वीर्येण मृगो न भीमः कुचरो गिरिष्ठाः।
यस्योरुषु त्रिषु विक्रमणेष्वधिक्षियन्ति भुवनानि विश्वा ॥२॥

विष्णुदेवका तीन पाउमा ब्रह्माण्ड अडेको छ। भयङ्कर, हिंसक र पहाडका कन्दरामा बस्ने पराक्रमी पशु आदि सारा संसारले विष्णुदेवका पराक्रमको प्रशंसा गर्दछ।

प्र विष्णवे शूषमेतु मन्म गिरिक्षित उरुगायाय वृष्णे।
य इदं दीर्घं प्रयतं सधस्थमेको विममे त्रिभिरित्पदेभिः ॥३॥

विष्णुदेवले एक्लै तीन पाइलाले अति व्यापक दिव्यलोकलाई मापन गरे। उनैले मेघमा रहेका अत्यन्त प्रशंसनीय जललाई बर्सिनमा सहयोग गरे। उनै विष्णु सूर्यका रूपमा रहेका छन् र हामी प्रखर भावनाले उच्चारण गर्दै स्तोत्र समर्पण गर्दछौं।

यस्य त्री पूर्णा मधुना पदान्यक्षीयमाणा स्वधया मदन्ति।
य उ त्रिधातु पृथिवीमुत द्यामेको दाधार भुवनानि विश्वा ॥४॥

विष्णुदेवका तीन अमृतमय चरणका धारण क्षमताले तीन धातुद्वारा पृथ्वी र द्युलोकलाई आनन्दित गराउँछन्। विष्णुदेव नै सम्पूर्ण लोकहरूका एकमात्र आधार हुन्।

तदस्य प्रियमभि पाथो अश्यां नरो यत्र देवयवो मदन्ति।
उरुक्रमस्य स हि बन्धुरित्था विष्णोः पदे परमे मध्व उत्सः ॥५॥

देवताको उपासना गर्ने मानिसहरू जहाँ पुगेर विशेष रूपले आनन्दको अनुभूति गर्दछन्, विष्णुदेवको त्यही प्रिय धाम हामी पनि पाऔं। विष्णुदेव महापराक्रमी वीर इन्द्रका बन्धु हुन्। विष्णुदेवका त्यस उत्तम धाममा अमृत जलधारा सधैं प्रवाहित भइरहन्छ।

ता वां वास्तून्युश्मसि गमध्यै यत्र गावो भूरिशृङ्गा अयासः।
अत्राह तदुरुगायस्य वृष्णः परमं पदमव भाति भूरि ॥६॥

हे इन्द्र र वरुणदेव ! हामी आफ्नो निवासका लागि अति तीक्ष्ण र स्वास्थ्यप्रद सूर्य रश्मि प्रवेश गर्न सक्ने आश्रयस्थल पाऔं भनेर तिमीहरू दुवैसित प्रार्थना गर्दछौं। असल गृहमा अनेकौंबाट उपासना गरिने र सामर्थ्यसम्पन्न विष्णुदेवको उत्तम धाममा रहेका विशिष्ट विभूतिहरू स्वयं प्रकट भइरहून्।

[सूक्त - १५५]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - विष्णु इन्द्राविष्णू। **छन्द** - जगती।

प्र वः पान्तमन्धसो धियायते महे शूराय विष्णवे चार्चत।
या सानुनि पर्वतानामदाभ्या महस्तस्थतुरर्वतेव साधुना ॥१॥

अपराजेय तथा असल महिमायुक्त, पर्वत शिखरमा रहने र सद्बुद्धिमा प्रेरित गर्ने महान् इन्द्रदेव तथा विष्णुदेवका लागि सोमरससरूपी उत्तम हविष्यान्न समर्पित गर।

त्वेषमित्था समरणं शिमीवतोरिन्द्राविष्णू सुतपा वामुरुष्यति।
या मर्त्याय प्रतिधीयमानमित्कृशानोरस्तुरसनामुरुष्यथः ॥२॥

हे इन्द्रदेव र विष्णुदेव ! तिमीहरू दुवै शत्रुको सर्वनाश गर्ने अग्निका प्रखर र तेजस्वी ज्वालालाई सकेसम्म धेरै विस्तार गर्दछौ। सर्वतिर विस्तृत र सामर्थ्यवान् तिमीहरू दुवैको तेज सोमयाग गर्ने मानिसहरूले अरू विस्तृत गर्दछन्।

ता ईं वर्धन्ति मह्यस्य पौंस्यं नि मातरा नयति रेतसे भुजे।
दधाति पुत्रोऽवरं परं पितुर्नाम तृतीयमधि रोचने दिवः ॥३॥

प्रार्थना सूर्यरूपी विष्णुदेवको महिमामय सामर्थ्य विशेष रूपमा बढ्छ। विष्णुदेव आफ्नो क्षमता उत्पादन र उपयोग गर्नका लागि द्युलोक तथा पृथिवीरूपी दुई माताका बीचमा प्रतिष्ठित छन्। पुत्रले पिताको गुण तीन किसिमले ग्रहण गरेझैं विष्णुले आफ्ना सबै गुण द्युलोकमा स्थापित गर्दछन्।

तत्तदिदस्य पौंस्यं गृणीमसीनस्य त्रातुरवृकस्य मीळ्हुषः।
यः पार्थिवानि त्रिभिरिद्विगामभिरुरु क्रमिष्टोरुगायाय जीवसे ॥४॥

सूर्यरूपी विष्णुदेवले आफ्नो मार्ग विस्तृत गर्न र जीवनशक्ति सञ्चालन गर्नका लागि सिङ्गो तथा विस्तृत संसारलाई तीनै वटा पाइलाले नापिदिए। यस्ता संरक्षक, शत्रुरहित, सुखकारक र सबै पदार्थका स्वामी विष्णुदेवका ती सबै पराक्रमपूर्ण कार्यलाई सबैले प्रशंसा गर्दछन्।

द्वे इदस्य क्रमणे स्वर्दृशोऽभिख्याय मर्त्यो भुरण्यति।
तृतीयमस्य नकिरा दधर्षति वयश्चन पतयन्तः पतत्रिणः ॥५॥

मानिसका लागि तेजयुक्त, विष्णुदेवका दुई पाइलाको परिचय पाउनु सम्भव छ। तर तेस्रो पाइलाका विषयमा जान्न सबैका लागि असम्भव नै छ। बलिया पँखेटा भएका पक्षीले पनि त्यसलाई जान्न सक्दैनन्।

चतुर्भिः साकं नवतिं च नामभिश्चक्रं न वृत्तं व्यतीँरवीविपत्।
बृहच्छरीरो विमिमान ऋक्वभिर्युवाकुमारः प्रत्येत्याहवम् ॥६॥

सूर्यरूपी विष्णुदेव चौरानब्बे वटा समयका गणनाका एकाइहरूलाई आफ्नै प्रेरणा र शक्तिले चक्रको रूपमा घुमाइरहन्छन्। विशाल स्वरूप भएका, सधैँ तन्नेरी देखिने, कहिल्यै नघट्ने, सूर्यरूपी विष्णुदेव कालको गतिलाई प्रेरित गर्द ऋचाहरूद्वारा आह्वान गरिँदा यज्ञतर्फ आइरहेका छन्।

## [सूक्त - १५६]

ऋषि – दीर्घतमा औचथ्य। देवता – विष्णु। छन्द – जगती।

भवा मित्रो न शेव्यो घृतासुतिर्विभूतद्युम्न एवया उ सप्रथाः।
अधा ते विष्णो विदुषा चिदर्ध्यः स्तोमो यज्ञश्च राध्यो हविष्मता ॥१॥

हे विष्णुदेव ! जल उत्पादनकर्ता, अति देदीप्यमान, सर्वत्र गतिशील, अति व्यापक र मित्रसमान हितकारी भएकाले तिमी सुख दिन्छौ। हे विष्णुदेव ! मानिसले हविष्यान्न चढाउँदै सम्पन्न गरेको यज्ञ स्तुति योग्य हुन्छ। ज्ञानसम्पन्न मानिसले तिम्रा लागि गाएको स्तोत्र प्रशंसनीय हुन्छ।

यः पूर्व्याय वेधसे नवीयसे सुमज्जानये विष्णवे ददाशति।
यो जातमस्य महतो महि ब्रवत्सेदु श्रवोभिर्युज्यं चिदभ्यसत् ॥२॥

अनन्त कालदेखिको ज्ञानजस्तै, सधैँका नवीन र सद्बुद्धिका प्रेरक विष्णुदेवका लागि हविष्यान्न चढाउने मानिस कीर्तिमान भएर उच्च पद प्राप्त गर्दछ।

तमु स्तोतारः पूर्व्यं यथा विद ऋतस्य गर्भं जनुषा पिपर्तन।
आस्य जानन्तो नाम चिद्विवक्तन महस्ते विष्णो सुमतिं भजामहे ॥३॥

हे स्तोताहरू हो ! यज्ञका केन्द्रजस्ता र सधैँका नौला विष्णुदेवका सम्बन्धमा जे जानेका छौ, त्यसै अनुसार स्तुति गरेर उनलाई सन्तुष्ट गराओ। उनको तेजस्वी पराक्रमसित सम्बन्धित जानकारी भएअनुसार तिमीहरू यिनको वर्णन गर। हे सर्वत्र व्यापक विष्णुदेव ! हामी तिम्रा असल प्रेरणालाई अनुसरण गरौँ।

तमस्य राजा वरुणस्तमश्विना क्रतुं सचन्त मारुतस्य वेधसः।
दाधार दक्षमुत्तममहर्विदं व्रजं च विष्णुः सखिवाँ अपोर्णुते ॥४॥

सर्वज्ञ विष्णुदेवका साथ तेजसम्पन्न वरुण र अश्विनीकुमारहरू पनि क्रियाशील हुन्छन्। मित्रगणका सूर्यरूपी विष्णुदेव आफ्ना सामर्थ्यले दिन प्रकट गर्दछन्, अन्धकारको आवरण छिन्नभिन्न गरिदिन्छन्।

आ यो विवाय सचथाय दैव्य इन्द्राय विष्णुः सुकृते सुकृत्तरः।
वेधा अजिन्वत्त्रिषधस्थ आर्यमृतस्य भागे यजमानमाभजत् ॥५॥

दिव्यलोकमा निवास गर्ने र असल कर्म गर्नेहरूमध्ये सर्वोत्तम विष्णुदेवले नै श्रेष्ठ कर्मशील इन्द्रदेवलाई सहयोग गर्दछन्। तीनै लोकमा व्याप्त विष्णुदेव असल पुरुषलाई तुष्ट गराउँछन् र यज्ञकर्ताका नजिक स्वतः पुग्दछन्।

## [सूक्त - १५७]

ऋषि – दीर्घतमा औचथ्य। देवता – अश्विनीकुमार। छन्द – जगती त्रिष्टुप्।

अबोध्यग्निर्ज्म उदेति सूर्यो व्युषाश्चन्द्रा मह्यावो अर्चिषा।
आयुक्षातामश्विना यातवे रथं प्रासावीद्देवः सविता जगत्पृथक् ॥१॥

भूमिमा अग्निदेव चैतन्य भए, सूर्यदेव उदाए। महान् उषादेवी आफ्ना तेजले दुनियाँलाई हर्षित गराउँदै आइन्। अश्विनीकुमारले यात्राका लागि आफ्नो अश्व रथमा नारिसके। सूर्यदेवले सबै प्राणीहरूलाई आफ्ना अलगअलग कर्ममा प्रवृत्त गराए।

यद्युञ्जाथे वृषणमश्विना रथं घृतेन नो मधुना क्षत्रमुक्षतम्।
अस्माकं ब्रह्म पृतनासु जिन्वतं वयं धना शूरसाता भजेमहि ॥२॥

हे अश्विनीकुमार हो ! तिमीहरू आफ्ना राम्रा रथमा घोडा नारेर हाम्रा पुरुषार्थलाई पुष्ट गराओ। हाम्रा प्रजाहरूमा ज्ञानको वृद्धि गर। हामी युद्धमा शत्रु पराजित गरेर धन प्राप्त गर्नमा समर्थ होऔं।

अर्वाङ् त्रिचक्रो मधुवाहनो रथो जीराश्वो अश्विनोर्यातु सुष्टुतः।
त्रिवन्धुरो मघवा विश्वसौभगः शं न आ वक्षद् द्विपदे चतुष्पदे ॥३॥

हे अश्विनीकुमार हो ! तिमीहरू रथमा चढेर यहाँ आओ। तीन पाङ्ग्रा भएको र मधुर अमृततुल्य, पोषक तत्त्व बोक्ने, शीघ्रगामी अश्व नारिएको, प्रशंसनीय, तीन वटा बस्ने ठाउँ भएको, सम्पूर्ण ऐश्वर्य र सौभाग्यले भरिएको तिमीहरूको रथ प्राणीका लागि सुखदायी होस्।

आ न ऊर्जं वहतमश्विना युवं मधुमत्या नः कशया मिमिक्षतम्।
प्रायुस्तारिष्टं नी रपांसि मृक्षतं सेधतं द्वेषो भवतं सचाभुवा ॥४॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै मनग्गे अन्न प्रदान गर। हामीलाई मधुले परिपूर्ण पात्र प्रदान गर। हामीलाई दीर्घायु प्रदान गर। हाम्रा सबै विकृतिहरू हटाइदेओ र द्वेषको भावना मेटाएर सधैं हाम्रो सहायक भइदेओ।

युवं ह गर्भं जगतीषु धत्थो युवं विश्वेषु भुवनेष्वन्तः।
युवमग्निं च वृषणावपश्च वनस्पतींरश्विनावैरयेथाम् ॥५॥

हे शक्तिशाली अश्विनीकुमारहरू हो ! गाईमा गर्भ स्थापित गर्नका लागि तिमीहरू दुवै सक्षम छौ। अग्नि, जल र वनस्पतिलाई तिमीहरू नै प्रेरित गर्दछौ।

युवं ह स्थो भिषजा भेषजेभिरथो ह स्थो रथ्येभिः।
अथो ह क्षत्रमधि धत्थ उग्रा यो वां हविष्मान्मनसा ददाश ॥६॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै असल औषधिले युक्त उत्तम वैद्य हौ। उत्तम रथले युक्त श्रेष्ठ रथी हौ। हे पराक्रमी अश्विनीकुमारहरू हो ! जसले तिमीहरूप्रति श्रद्धाको भावनाले हविष्यान्न अर्पित गर्दछन्, उनीहरूलाई पुरुषार्थ निर्वाह गर्नका लागि तिमीहरू दुवै उपयुक्त शौर्य प्रदान गर्दछौ।

[सूक्त - १५८]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - अश्विनीकुमार। **छन्द** - त्रिष्टुप् अनुष्टुप्।

वसू रुद्रा पुरुमन्तू वृधन्ता दशस्यतं नो वृषणावभिष्टौ।
दस्रा ह यद्रेक्ण औचथ्यो वां प्र यत्सस्राथे अकवाभिरूती ॥१॥

हे सामर्थ्यवान्, शत्रुनाशक, सबैका आश्रयरूप, दुष्टका लागि रौद्ररूप, ज्ञानवान्, समृद्धिशाली अश्विनीकुमारहरू हो ! तिमीहरू हामीलाई अभीष्ट सहयोग प्रदान गर। उचथ्यका पुत्र दीर्घतमाले धनसम्पत्ति प्राप्त गर्नका लागि प्रार्थना गर्दा श्रेष्ठ संरक्षण समार्थ्यका साथ शीघ्रतापूर्वक तिमीहरू दुवै पुग्दछौ।

को वां दाशत्सुमतये चिदस्यै वसू यद्धेथे नमसा पदे गोः।
जिगृतमस्मे रेवतीः पुरन्धीः कामप्रेणेव मनसा चरन्ता ॥२॥

सबैका आश्रयदाता हे अश्विनीकुमारहरू ! यस पृथ्वीमा जसले वन्दना गर्दछ, तिमीहरू दुवै उनलाई अनुदान प्रदान गर्दछौ। तिमीहरूका श्रेष्ठ बुद्धिलाई सन्तुष्ट गर्न सक्ने गरी कसले के चढाउन सक्छ र ? हे सर्वत्र विचरणशील ! तिमीहरू हामीलाई धनका साथै पोषक दुध दिने गाई प्रदान गर।

युक्तो ह यद्वां तौग्र्याय पेरुर्वि मध्ये अर्णसो धायि पज्रः।
उप वामवः शरणं गमेयं शूरो नाज्म पतयद्भिरेवैः ॥३॥

अश्विनीकुमारहरू हो ! राजा तुग्रका पुत्र भुज्युलाई संरक्षण गर्नका लागि तिमीहरूले गतिशील यान सागरका बीचमा आफ्नै सामर्थ्यले स्थिर गरायौ। वीर पुरुषले युद्धमा प्रवेश गरेजस्तै संरक्षणपूर्ण आश्रय पाउनका लागि हामी तिमीहरू दुवैका निकट पुगौं।

उपस्तुतिरौचथ्यमुरुष्येन्मा मामिमे पतत्रिणी वि दुग्धाम्।
मा मामेधो दशतयश्चितो धाक् प्र यद्वां बद्धस्त्मनि खादति क्षाम् ॥४॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैसित गरिएका प्रार्थनाले हाम्रो रक्षा गरोस्। गतिशील दिन र

रात्रिले नसताऊन्। दस गुना समिधा हालेर प्रज्वलित गरिएका अग्निले मलाई भस्म नगराऊन्। जसले तिमीहरूका श्रद्धालु उचथ्यलाई बाँधिदिएको थियो, ऊ आफैं अहिले यस धर्तीमा असहाय स्थितिमा अलपत्र छ भनेर उचथ्यका पुत्र दीर्घतमा भन्दछन्।

**न मा गरन्नद्यो मातृतमा दासा यदीं सुसमुब्धमवाधुः।**
**शिरो यदस्य त्रैतनो वितक्षत्स्वयं दास उरो अंसावपि ग्ध ॥५॥**

उचथ्यपुत्र दीर्घतमालाई दस्युले बलियो गरी बाँधेर नदीमा फ्याँकिदिए। मातृरूपा नदीहरूले उनलाई संरक्षण प्रदान गरे। जब मेरो शिर, छाती र घाँटी काट्न खोजियो, त्यस बेला तिम्रो कृपा एवं दिव्य संरक्षणले म तिम्रो सेवक सुरक्षित रहें, तर दस्युका अङ्ग काटिए।

**दीर्घतमा मामतेयो जुजुर्वान्दशमे युगे।**
**अपामर्थं यतीनां ब्रह्मा भवति सारथिः ॥६॥**

ममताका पुत्र दीर्घतमा ऋषि दशम युग वा एक सय एघार वर्षमा शारीरिक दृष्टिले वृद्ध अवस्थामा पुगे। उनले संयमशील उत्तम कर्म गर्दै धर्म, अर्थ, काम र मोक्ष यी चार पुरुषार्थ प्राप्त गरेर ब्रह्मज्ञानले सम्पन्न भएपछि सबैलाई सञ्चालन गर्ने सारथी भए।

### [सूक्त - १५९]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - द्यावा - पृथिवी। **छन्द** - जगती।

**प्र द्यावा यज्ञैः पृथिवी ऋतावृधा मही स्तुषे विदथेषु प्रचेतसा।**
**देवेभिर्ये देवपुत्रे सुदंससेत्था धिया वार्याणि प्रभूषतः ॥१॥**

देवपुत्री द्यावापृथिवी र अन्य देवशक्तिहरू मिलेर आआफ्ना श्रेष्ठ कर्म तथा प्रेरक विचारद्वारा सबैलाई श्रेष्ठतम ऐश्वर्यले विभूषित गर्दछन्। यज्ञीय भावनाका पोषक, यज्ञीय विचारका प्रेरक, पृथिवी र द्युलोकलाई हामी स्तुतिमन्त्रले प्रार्थना गर्दछौं।

**उत मन्ये पितुरद्रुहो मनो मातुर्महि स्वतवस्तद्धवीमभिः।**
**सुरेतसा पितरा भूम चक्रतुरुरु प्रजाया अमृतं वरीमभिः ॥२॥**

हामी विद्वेषरहित पृथिवी र आकाशका रूपमा रहेका मातापितालाई बलियो महान् मनले स्तुति गरेर प्रसन्न गर्दछौं। पराक्रमशील माता र स्रष्टारूपी पिताले आफ्ना श्रेष्ठ सामर्थ्यले प्रजाको रक्षा गर्दै उनीहरूलाई गतिशील बनाए। उनका कार्य सर्वोत्तम र प्रशंसनीय छन्।

**ते सूनवः स्वपसः सुदंससो मही जज्ञुर्मातरा पूर्वचित्तये।**
**स्थातुश्च सत्यं जगतश्च धर्मणि पुत्रस्य पाथः पदमद्वयाविनः ॥३॥**

असल, कर्मशील र गुणसम्पन्न सन्तानहरू पृथिवी र द्यावारूपी मातापिताका प्रारम्भिक विशेषतासित परिचित छन्। द्युलोक एवं पृथिवी लोक दुवैले विद्रोहरहित स्थावर र जङ्गम सन्तानको राम्ररी संरक्षण गर्दै आफ्नो सत्यरूप उच्च पद सुशोभित गर्दछन्।

**ते मायिनो ममिरे सुप्रचेतसो जामी सयोनी मिथुना समोकसा।**
**नव्यंनव्यं तन्तुमा तन्वते दिवि समुद्रे अन्तः कवयः सुदीतयः ॥४॥**

द्युलोक रूपी आकाशले गङ्गाका बीचमा रहेका सूर्यका क्रान्तदर्शी ज्ञानयुक्त किरणमा नित्य नयाँनयाँ रङ्गबिरङ्ग रच्दछन्। यी किरणहरू आपसमा सहोदर दिदीबहिनीझैं एकै स्थानबाट उत्पन्न हुन्छन्। परस्पर सहयोगको भावनाले एकै घरमा निवास गर्ने यी किरणहरूले द्युलोक र पृथिवी ओगटेका छन्।

**तद्राधो अद्य सवितुर्वरेण्यं वयं देवस्य प्रसवे मनामहे।**
**अस्मभ्यं द्यावापृथिवी सुचेतुना रयिं धत्तं वसुमन्तं शतग्विनम् ॥५॥**

हामी आज श्रेष्ठ कर्म निर्वाह गर्नका लागि सम्पूर्ण विश्वका उत्पादक सूर्यदेवसित उत्तम ऐश्वर्यको कामना गर्दछौं। द्यावा र पृथ्वीले आफ्ना उत्तम प्रेरणाबाट हाम्रा लागि असल आवास तथा पशुधन प्रदान गरून्।

[सूक्त - १६०]

ऋषि - दीर्घतमा औचथ्य। देवता - द्यावा - पृथिवी। छन्द - जगती।

**ते हि द्यावापृथिवी विश्वशम्भुव ऋतावरी रजसो धारयत्कवी।**
**सुजन्मनी धिषणे अन्तरीयते देवो देवी धर्मणा सूर्यः शुचिः ॥१॥**

द्यावा र पृथिवी विश्वमा सुखका आधार हुन् र यिनीहरू यज्ञमय छन्। यिनीहरू तेजस्वी र मेधावीहरूका संरक्षक, सर्वउत्पादक एवं ज्ञानसम्पन्न छन्। यी दुईका मध्यमै सम्पूर्ण प्राणीमध्ये पवित्र सूर्यदेव आफ्नो धारण क्षमताले युक्त भएर गमन गर्दछन्।

**उरुव्यचसा महिनी असश्चता पिता माता च भुवनानि रक्षतः।**
**सुधृष्टमे वपुष्ये३ न रोदसी पिता यत्सीमभि रूपैरवासयत् ॥२॥**

पिताले आफ्ना दिव्य प्रकाशद्वारा मानिसलाई आश्रय प्रदान गर्दछन्। त्यसैले यी अति सामर्थ्यवान् भएर द्यावा र पृथिवीलाई पुष्टि प्रदान गर्दछन्। अति व्यापक, महिमामय भिन्नभिन्न प्रकृतिका यी मातापिता सबै लोकका संरक्षक हुन्।

**स वह्निः पुत्रः पित्रोः पवित्रवान्पुनाति धीरो भुवनानि मायया।**
**धेनुं च पृश्निं वृषभं सुरेतसं विश्वाहा शुक्रं पयो अस्य दुक्षत ॥३॥**

मातापिताप्रति कर्तव्य पूरा गर्ने पुत्ररूपी ज्ञानवान् सूर्यदेव आफ्ना सामर्थ्यले सबै लोकमा पवित्रता सञ्चार गराउँछन्। विविध रूप भएका पृथिवी र बलशाली द्युलोकलाई पावन बनाउँदै आकाशबाट जल बर्साएर तिनले सबै प्राणीलाई परिपुष्ट गराउँछन्।

**अयं देवानामपसामपस्तमो यो जजान रोदसी विश्वशम्भुवा।**
**वि यो ममे रजसी सुक्रतूययाजरेभिः स्कम्भनेभिः समानृचे ॥४॥**

जुन देवताले संसारका लागि आनन्दप्रद द्युलोक एवं पृथ्वीको उत्पत्ति गराए, जसले उत्तम कर्मको प्रेरणाले द्यावा र पृथिवी दुवै लोक व्याप्त गराए, जसले अजर, सुदृढ आधारहरूले दुवै लोकलाई स्थिरता दिए, यस्ता श्रेष्ठ, कर्मशील, देवताका बीचमा अग्रगण्य देवता प्रशंसनीय छन्।

**ते नो गृणाने महिनी महि श्रवः क्षत्रं द्यावापृथिवी धासथो बृहत्।**
**येनाभि कृष्टीस्ततनाम विश्वहा पनाय्यमोजो अस्मे समिन्वतम् ॥५॥**

द्यावा र पृथिवी प्रसन्न भएर हाम्रा लागि प्रचुर अन्न र सामर्थ्य प्रदान गरुन्। त्यसबाट हामी सन्तान विस्तार गर्न समर्थ होऔं। यी दुवैले नित्य हाम्रा लागि उत्तम प्रेरणा युक्त शक्ति प्रदान गरुन्।

[सूक्त - १६१]

ऋषि - दीर्घतमा औचथ्य। देवता - ऋभुगण। छन्द - जगती त्रिष्टुप्।

**किमु श्रेष्ठः किं यविष्ठो न आजगन्किमीयते दूत्यं१ कद्यदूचिम।**
**न निन्दिम चमसं यो महाकुलोऽग्ने भ्रातर्द्रुण इद्भूतिमूदिम ॥१॥**

हामीछेउ को आए ? यिनी मभन्दा जेठा हुन् कि कान्छा ? हे भ्राता अग्निदेव ! हामी यस कुलमा उत्पन्न हव्यान्न दूषित नगरौं। कृपया यसको उपभोग गर्ने उपाय बताऊ।

**एकं चमसं चतुरः कृणोतन तद्वो देवा अब्रुवन्तद्व आगमम्।**
**सौधन्वना यद्येवा करिष्यथ साकं देवैर्यज्ञियासो भविष्यथ ॥२॥**

हे सुधन्वाका पुत्रहरू हो ! यस अन्नलाई चार भागमा विभक्त गर भन्ने देवशक्तिबाट तिमीहरूलाई निर्देश छ। यसै निवेदनका लागि हामी तिमीहरूका सामु आएका हौं। यदि यसअनुसार गर्दछौ भने तिमीहरू पनि देवताको परम पदका अधिकारी हुनेछौ।

**अग्निं दूतं प्रति यदब्रवीतनाश्वः कर्त्वो रथ उतेह कर्त्वः।**
**धेनुः कर्त्वा युवशा कर्त्वा द्वा तानि भ्रातरनु वः कृत्व्येमसि ॥३॥**

हे ऋभुदेवहरू हो ! हव्यवाहक अग्निदेवसित तिमीहरूले अश्व, गाई र रथ राम्रो बनाइदेऊ, वृद्ध मातापितालाई तन्नेरी बनाइदेऊ भन्ने निवेदन गऱ्यौ। ती सबै काम गरिदिने अग्निदेव बन्धुसरहका छन्। हे अग्निदेव ! हामी तिम्रो अनुगमन गर्दछौं।

**चकृवांस ऋभवस्तदपृच्छत क्वेदभूद्यः स्य दूतो न आजगन्।**
**यदावाख्यच्चमसाञ्चतुरः कृतानादित्त्वष्टा ग्नास्वन्तर्न्यानजे ॥४॥**

हे ऋभुदेवहरू हो ! काम गरिसकेपछि दूतको रूपमा हामी समक्ष आएका अग्नि कता गए भनेर

तिमीहरूले सोध्यौ। त्वष्टाले अन्न चार भागमा विभाजन गरेर अग्निदेवलाई अर्पित गरे। त्यस बेला ती दूतहरू वाणीरूपी स्त्रीभित्र समाविष्ट थिए।

**हनामैनाँ इति त्वष्टा यदब्रवीच्चमसं ये देवपानमनिन्दिषुः।**
**अन्या नामानि कृण्वते सुते सचाँ अन्यैरेनान्कन्या३ नामभिः स्परत् ॥५॥**

देवताहरूले रुचाउने हविष्यान्नको निन्दा गर्नेहरूलाई संहार गर भनेर त्वष्टादेवले निर्देश गरे। आपससी सहयोगले पेलिएको सोमलाई विभिन्न नामले सम्बोधित गरिन्छ। त्यस बेला वाणीरूपी कन्या पनि उसै नामले सम्बोधित गर्दछिन्।

**इन्द्रो हरी युयुजे अश्विना रथं बृहस्पतिर्विश्वरूपामुपाजत।**
**ऋभुर्विभ्वा वाजो देवाँ अगच्छत स्वपसो यज्ञियं भागमैतन ॥६॥**

इन्द्रदेव आफ्नो अश्व नारेर, अश्विनीकुमारहरू आफ्नो रथ तयार गरेर यज्ञमा जान लागे। बृहस्पतिदेवले पनि विभिन्न स्तोत्ररूप वाणी आरम्भ गरिदिए। त्यसैले ऋभु, विभ्वा र वाज पनि देवताहरूका समीप गएर यज्ञको भाग प्राप्त गरे।

**निश्चर्मणो गामरिणीत धीतिभिर्या जरन्ता युवशा ताकृणोतन।**
**सौधन्वना अश्वादश्वमतक्षत युक्त्वा रथमुप देवाँ अयातन ॥७॥**

हे सुधन्वाका पुत्रहरू हो ! तिमीहरूका उचित प्रयासले छाला खुइलिएका गाईलाई पुनर्जीवन प्राप्त भयो। वृद्ध मातापितालाई तिमीहरूले तरुण बनायौ। एउटा घोडाबाट अर्को घोडा उत्पन्न गरेर तिनलाई आफ्ना रथमा जुटाएर देवतासामु उपस्थित भयौ।

**इदमुदकं पिबतेत्यब्रवीतनेदं वा घा पिबता मुञ्जनेजनम्।**
**सौधन्वना यदि तन्नेव हर्यथ तृतीये घा सवने मादयाध्वै ॥८॥**

हे सुधन्वाका पुत्रहरू हो ! तिमीहरू जल पान गर, अथवा कुशले निचोरेको सोमरस पान गर। यदि तिमीहरूलाई अहिले पिउने इच्छा छैन भने पनि तेस्रो प्रहरमा अवश्य पिएर आनन्दित होओ।

**आपो भूयिष्ठा इत्येको अब्रवीदग्निर्भूयिष्ठ इत्यन्यो अब्रवीत्।**
**वधर्यन्तीं बहुभ्यः प्रैको अब्रवीदृता वदन्तश्चमसाँ अपिंशत ॥९॥**

कसैले जलको, कसैले अग्निको र कसैले भूमिको महत्त्व बढी भएको सिद्ध गरे। यस किसिमले ऋभुहरूले तीनै तत्त्वको उपयोगिता स्थापित गर्दै ऐश्वर्यलाई विभाजन गरे।

**श्रोणामेक उदकं गामवाजति मांसमेकः पिंशति सूनयाभृतम्।**
**आ निम्रुचः शकृदेको अपाभरत्किं स्वित्पुत्रेभ्यः पितरा उपावतुः ॥१०॥**

एउटा पुत्रले गाईलाई जलतर्फ प्रेरित गरे। अर्का मांस आदि बढाउनमा खटिए। तेस्राले सूर्यास्त भएपछि अवशेष हटाए। यस्ता पुत्र हुने पिताले अरू के आशा गर्लान् ?

**उद्वत्स्वस्मा अकृणोतना तृणं निवत्स्वपः स्वपस्यया नरः।**
**अगोह्यस्य यदसस्तना गृहे तदद्येदमृभवो नानु गच्छथ ॥११॥**

हे ऋभुदेवहरू हो ! तिमीहरूले आफ्ना महान् पुरुषार्थले उच्च स्थानमा उपयोगी तृण आदि उब्जायौ र तल्लो भागमा जल सङ्ग्रह गर्‍यौ। तिमीहरू यस बेलासम्म सूर्यमण्डलमा विश्राम गरिरह्यौ। अब यस प्रक्रियाको अनुगमन किन गर्दैनौ ?

**सम्मील्य यद्भुवना पर्यसर्पत क्व स्वित्तात्या पितरा व आसतुः।**
**अशपत यः करस्नं व आददे यः प्राब्रवीत्प्रो तस्मा अब्रवीतन ॥१२॥**

सूर्यका किरणमा व्याप्त रहेका हे ऋभुदेवहरू हो ! जब तिमीहरू दुनियाँ ओगटेर चार दिशामा घुम्न लाग्छौ। त्यति बेला तिमीहरूका हात रोक्ने मातापिता कता लुकेका हुन्छन् ? जसले उपयोग गर्दैनन् उनलाई शाप लाग्दछ। जसले प्रेरक वचन बोल्दछन्, उनलाई तिमीहरू प्रगति प्रदान गर्दछौ।

**सुषुप्वांस ऋभवस्तदपृच्छतागोह्य क इदं नो अबूबुधत्।**
**श्वानं बस्तो बोधयितारमब्रवीत्संवत्सर इदमद्या व्यख्यत ॥१३॥**

हे सूर्यका किरणरूपी ऋभुहरू हो ! हामीलाई निद्राबाट कसले जगायो भनी तिमीहरूले सूर्यसित सोध्यौ अनि सूर्यले जगाउने वायु हुन् भनी बताए। तिमीहरूले संवत्सर बदलिँदा संसारलाई प्रकाशमान गरेका हौ।

दिवा यान्ति मरुतो भूम्याग्निरयं वातो अन्तरिक्षेण याति।
अद्भिर्याति वरुणः समुद्रैर्युष्माँ इच्छन्तः शवसो नपातः ॥१४॥
हे शक्तिशाली ऋभुदेवहरू हो ! तिमीहरूलाई पाउने कामना गर्दै मरुत्गण देवलोकमा, भूमिमाथि अग्निदेव र आकाशमा वायुदेव हिँडदछन्। जलप्रवाहका रूपमा वरुणदेव सबैसित भेट हुन्छन्।

[सूक्त - १६२]

ऋषि - दीर्घतमा औचथ्य। देवता - अश्वस्तुति। छन्द - त्रिष्टुप् जगती।

मा नो मित्रो वरुणो अर्यमायुरिन्द्र ऋभुक्षा मरुतः परि ख्यन्।
यद्वाजिनो देवजातस्य सप्तेः प्रवक्ष्यामो विदथे वीर्याणि ॥१॥
यज्ञशालामा हामी याजकहरू दिव्यगुणसम्पन्न, गतिमान्, पराक्रमी, बलशाली देवताका ऐश्वर्यको गान गर्दछौं। अतः मित्र, वरुण, अर्यमा, आयु, ऋभुक्ष, मरुत्गण, इन्द्र आदि देवताहरू हाम्रो उपेक्षा गर्दै हामीबाट विमुख नहोऊन्।

यन्निर्णिजा रेक्णसा प्रावृतस्य रातिं गृभीतां मुखतो नयन्ति।
सुप्राङजो मेम्यद्विश्वरूप इन्द्रापूष्णोः प्रियमप्येति पाथः ॥२॥
सुसंस्कारित, सबैलाई ढाक्नसक्नेका मुखको नजिकै हविष्यान्न ल्याएपछि अगाडि ल्याइएको विश्वरूप अज (बाख्रो)का रूपमा म-म को स्वर निकाल्दै आउँदा उसले इन्द्र र पूषादेव आदिको प्रिय आहार प्राप्त गर्दछ।

एषच्छागः पुरो अश्वेन वाजिना पूष्णो भागो नीयते विश्वदेव्यः।
अभिप्रियं यत्पुरोडाशमर्वता त्वष्टेदेनं सौश्रवसाय जिन्वति ॥३॥
यो बाख्रो बलशाली अश्वका अगाडि ल्याइएपछि असल पुरुषले चञ्चल अश्वका साथै अजलाई सबैले प्रिय मान्ने पुरोडाशको भाग दिन्छन् र उत्तम यश प्राप्त गर्दछन्।

यद्धविष्यमृतुशो देवयानं त्रिर्मानुषाः पर्यश्वं नयन्ति।
अत्रा पूष्णः प्रथमो भाग एति यज्ञं देवेभ्यः प्रतिवेदयन्नजः ॥४॥
मानिसहरू तीनै देवयानका मार्गमा अश्वभैँ हविष्य उडाउँछन्। त्यस अजले पोषणको पहिलो भाग पाउँछ। देवताको हितका लागि यज्ञको विज्ञापन गर्दछ।

होताध्वर्युरावया अग्निमिन्धो ग्रावग्राभ उत शंस्ता सुविप्रः।
तेन यज्ञेन स्वरङ्कृतेन स्विष्टेन वक्षणा आ पृणध्वम् ॥५॥
होता, अध्वर्यु, प्रतिस्थाता, आग्नीध्र, ग्रावस्तोता, प्रशास्ता, ब्रह्मा आदि प्रज्ञावान् ऋत्विक् हो ! सबै किसिमले सजिएका यस यज्ञमा खोजेको कुरो पाउनका लागि तिमीहरू प्रवाहलाई समृद्ध बनाओ।

यूपव्रस्का उत ये यूपवाहाश्चषालं ये अश्वयूपाय तक्षति।
येचार्वते पचनं सम्भरन्त्युता तेषामभिगूर्तिर्न इन्वतु ॥६॥
हे ऋत्विक्हरू हो ! यज्ञको व्यवस्थामा सहयोग गर्ने, काठ काटेर मौलो बनाउने, मौलो यज्ञशालासम्म पुर्‍याउने, चषाल नामको यज्ञीय पात्र बनाउने, अश्व बाँध्नका लागि किलो गाड्ने यी सबैले गरेको प्रयास हाम्रा लागि हितकारी होस्।

उप प्रागात्सुमन्मेऽधायि मन्म देवानामाशा उप वीतपृष्ठः।
अन्वेनं विप्रा ऋषयो मदन्ति देवानां पुष्टे चकृमा सुबन्धुम् ॥७॥
अश्वमेध यज्ञको फलश्रुतिका रूपमा श्रेष्ठ मानवीय फल हामीलाई स्वतः प्राप्त होस्। देवताहरूको मनोरथ पूर्ण गर्नमा समर्थ यो अश्व सबैले रोज्दछन्। यो अश्व देवत्व पुष्टि गर्ने मित्रका रूपमा मानिएको छ। सबै बुद्धिमान् ऋषिले यसलाई अनुमोदन गरुन्।

य द्वाजिनो दाम सन्दानमर्वतो या शीर्षण्या रशना रज्जुरस्य।
यद्वा घास्य प्रभृतमास्येऽ तृणं सर्वा ता ते अपि देवेष्वस्तु ॥८॥
यो अश्व नियन्त्रण गर्नका लागि गर्धनको बन्धन, खुट्टाको बन्धन, कम्मर र टाउकाको बन्धन तथा मुखको घाँस आदि सबै देवतालाई अर्पित होस्।

यदश्वस्य क्रविषो मक्षिकाश यद्वा स्वरौ स्वधितौ रिप्तमस्ति।
यद्धस्तयोः शमितुर्यन्नखेषु सर्वा ता ते अपि देवेष्वस्तु ॥९॥
अश्वको भिँगा आदि लाग्ने विकृत भाग, उपकरणमा लागेको भाग, याजकका हातमा रहेको र नङ वा टापमा रहेको भाग ती सबै पनि देवताहरूमा समर्पित होऊन्।

यदूवध्यमुदरस्यापवाति य आमस्य क्रविषो गन्धो अस्ति।
सुकृता तच्छमितारः कृण्वन्तूत मेधं शृतपाकं पचन्तु ॥१०॥
हटाउनुपर्ने गरी गन्ध आउने पेटको भाग राम्रोसित मेटाइएको छ। यसको मेधबाट उपचार होस् र त्यसको पाचन पनि देवताहरूको अनुकूल होस्।

यत्ते गात्रादग्निना पच्यमानादभि शूलं निहतस्यावधावति।
मा तद्भूम्यामा श्रिषन्मा तृणेषु देवेभ्यस्तदुशद्भ्यो रातमस्तु ॥११ ॥
अग्निले पचाउँदै गरेका तिम्रा अङ्ग, घोचाको चोटले यताउता छरिए। भूमिमा वा झारपातमा परेर नहराईकन यज्ञको भाग पाउनुपर्ने देवताहरूका आहार बनून्।

ये वाजिनं परिपश्यन्ति पक्वं य ईमाहुः सुरभिर्निर्हरेति।
ये चार्वतो मांसभिक्षामुपासत उतो तेषामभिगूर्तिर्न इन्वतु ॥१२॥
जसले यस वाजिन्लाई पकाउँदै गरेको देख्छन् र जसले त्यसको आकर्षक सुगन्ध थाहा पाउँछन्, तिनीहरू यस भोग्य पदार्थसहितको आहार माग्दछन्। उनीहरूको पुरुषार्थ पनि हाम्रा लागि फलित होस्।

यन्नीक्षणं मांस्पचन्या उखाया या पात्राणि यूष्ण आसेचनानि।
ऊष्मण्यापिधाना चरूणामङ्काः सूनाः परि भूषन्त्यश्वम् ॥१३॥
उखा नामको आगो बाल्ने पात्र, उखामा पकाइने पुरोडाश, पुरोडाश हेरचाह गर्ने मान्छे, भाँडा सफा गर्ने मान्छे र साधन, नसेलाउने गरी लगाइएको बिर्को, चरु आदि बोक्ने मानिस र साधनहरू तथा पुरोडाश टुक्रा पार्ने मानिस र उपकरणहरू जेजति छन्, ती सबै यस अश्वमेधलाई सुहाउने खालका होऊन्।

निक्रमणं निषदनं विवर्तनं यच्च पड्बीशमर्वतः।
यच्च पपौ यच्च घासिं जघास सर्वा ता ते अपि देवेष्वस्तु ॥१४॥
धुवाँको गन्ध आएर अग्निले दुःख नदेओस्। आगाका रापले टल्किएको उखाले तिमीहरूलाई दिक्क नपारोस्। त्यस्तो अश्वमेध देवताहरू स्वीकार गर्दछन्।

मा त्वाग्निर्ध्वनयीद्धूमगन्धिर्मोखा भ्राजन्त्यभि विक्त जघ्रिः।
इष्टं वीतमभिगूर्तं वषट्कृतं तं देवासः प्रति गृभ्णन्त्यश्वम् ॥१५॥
यज्ञरूपी अश्व निस्कनु, आन्दोलित हुनु, पल्टिनु, पिउनु, खानु आदि सबै क्रिया देवताकै लागि होऊन्।

यदश्वाय वास उपस्तृणन्त्यधीवासं या हिरण्यान्यस्मै।
सन्दानमर्वन्तं पड्बीशं प्रिया देवेष्वा यामयन्ति ॥१६॥
यज्ञलाई समर्पित अश्व सजाउने माथिल्लो कपडा, गहना, टाउको र खुट्टा बाँध्ने मेखला आदि सबै देवताहरूकै प्रसन्नता प्रदान गर्ने खालका होऊन्।

यत्ते सादे महसा शूकृतस्य पार्ष्ण्या वा कशया वा तुतोद।
स्रुचेव ता हविषो अध्वरेषु सर्वा ता ते ब्रह्मणा सूदयामि ॥१७॥
अति हतारमा तिमीलाई सताउनेहरू, तल्लो भाग पकाउनका लागि दुःख दिनेहरूबाट गरिएका सबै गल्ती स्रुवाका आहुतिले सच्याइदिन्छ।

चतुस्त्रिंशद्वाजिनो देवबन्धोर्वङ्क्रीरश्वस्य स्वधितिः समेति।
अच्छिद्रा गात्रा वयुना कृणोत परुष्परुरनुघुष्या वि शस्त ॥१८॥
हे ऋत्विक्हरू हो ! धारण सामर्थ्य युक्त, गतिमान्, देवताको बन्धु यस अश्वका चौँतीस अङ्ग राम्रो किसिमले प्राप्त गर। हरेक अङ्ग आआफ्ना प्रयासले स्वस्थ बनाओ र त्यहाँका कमजोरी हटाओ।

एकस्त्वष्टुरश्वस्या विशस्ता द्वा यन्तारा भवतस्तथ ऋतुः।
या ते गात्राणामृतुथा कृणोमि ताता पिण्डानां प्र जुहोम्यग्नौ ॥१९॥
त्वष्टारूपी अश्वको विभाजन संवत्सरले गर्दछ। उत्तरायण र दक्षिणायन नामले दुई विभाग उसका मुख्य छन्। दुईदुई महिना वसन्त आदि ऋतुमा विभक्त हुन्छन्। यज्ञमा अलगअलग अङ्ग पुष्ट गर्नका लागि ऋतुसम्बन्धी अनुकूल पदार्थको आहुति दिन्छन्।

मा त्वा तपत्प्रिय आत्मापियन्तं मा स्वधितिस्तन्व आ तिष्ठिपत्ते।
मा ते गृध्नुरविशस्तातिहाय छिद्रागात्राण्यसिना मिथू कः ॥२०॥

हे अश्व ! तिम्रो परम मित्र आत्मतत्त्व अर्थात् आत्मगौरवले कहिल्यै पनि दुःख लाग्दो अवस्थामा छोडेर नहिँडोस्। शस्त्रले तिम्रा अवयवमा अधिकार जमाउन नसकोस्। अकुशल व्यक्तिले पनि तिम्रो रोगमा बाहेक उपयोगी अङ्गमा तरबार नचलाओस्।

न वा उ एतन्म्रियसे न रिष्यसि देवाँ इदेषि पथिभिः सुगेभिः।
हरी ते युञ्जा पृषती अभूतामुपास्थाद्वाजी धुरि रासभस्य ॥२१॥

हे अश्व ! तिम्रो न त नाश हुन्छ, न त तिमीले कसैको नाश गर्दछौ। तिमी सहज र सरल मार्गबाट देवतासम्म पुग्दछौ। शब्दोच्चारण गर्दा उपस्थित हुने वाजी र हरि तिमीसितै एकाकार हुँदै पुष्ट हुन्छन्।

सुगव्यं नो वाजी स्वश्व्यं पुंसः पुत्राँ उत विश्वापुषं रयिम्।
अनागास्त्वं नो अदितिः कृणोतु क्षत्रं नो अश्वो वनतां हविष्मान् ॥२२॥

देवत्व प्राप्त गर्ने यस बलशालीले हामीलाई छोरानाति, धनधान्य र उत्तम अश्वका रूपमा अपार वैभव प्रदान गरोस्। हामी दीनता, पाप र अपराधबाट सधैं टाढा रहौं। हाम्रा नागरिक अश्वजस्तै शक्तिशाली र पराक्रमी होऊन्।

## [सूक्त - १६३]

ऋषि - दीर्घतमा औचथ्य। देवता - ऋभुगण। छन्द - जगती त्रिष्टुप्।

यदक्रन्दः प्रथमं जायमान उद्यन्त्समुद्रादुत वा पुरीषात्।
श्येनस्य पक्षा हरिणस्य बाहू उपस्तुत्यं महि जातं ते अर्वन् ॥१॥

हे चञ्चल गति हुने ! बाजका पङ्खा र हरिणका खुट्टाजस्तो गतिशील छौ। तिमी पहिले समुद्रबाट उत्पन्न भयौ। त्यसपछि उत्पत्ति स्थानबाट प्रकट भएर शब्द गर्न थाल्यौ र त्यस बेलादेखि नै तिम्रो महिमा स्तुत्य भयो।

यमेन दत्तं त्रित एनमायुनगिन्द्र एणं प्रथमो अध्यतिष्ठत्।
गन्धर्वो अस्य रशनामगृभ्णात्सूरादश्वं वसवो निरतष्ट ॥२॥

वसुहरूले सूर्यमण्डलबाट अश्व निकाले। तीनै लोकमा विचरण गर्ने वायुले यमद्वारा प्रदान गरिएको अश्व रथमा नियोजित गरे। सर्वप्रथम त्यस अश्वमाथि इन्द्रदेव चढे र गन्धर्वले त्यसको लगाम नियन्त्रण गरे।

असि यमो अस्यादित्यो अर्वन्नसि त्रितो गुह्येन व्रतेन।
असि सोमेन समया विपृक्त आहुस्ते त्रीणि दिवि बन्धनानि ॥३॥

हे अर्वन् ! गोप्य व्रतका कारण तिमी यम हौ, आदित्य हौ, तीनै लोकमा व्याप्त छौ। सोमका साथ तिमी एक रूप हौ। द्युलोकमा तिम्रा तीन बन्धन छन् भनिन्छ।

त्रीणि त आहुर्दिवि बन्धनानि त्रीण्यप्सु त्रीण्यन्तः समुद्रे।
उतेव मे वरुणश्छन्त्स्यर्वन्यत्रा त आहुः परमं जनित्रम् ॥४॥

हे अर्वन् ! तिमीलाई श्रेष्ठ उत्पादक सूर्य भनिन्छ। दिव्य लोकमा, जलमा र अन्तरिक्षमा तिम्रा तीनतीन बन्धन छन् भनिन्छ। तिमीलाई वरुणका रूपमा हामी प्रशंसा गर्दछौं।

इमा ते वाजिन्नवमार्जनानीमा शफानां सनितुर्निधाना।
अत्रा ते भद्रा रशना अपश्यमृतस्य या अभिरक्षन्ति गोपाः ॥५॥

हे बलशाली ! तिम्रा सेचन गर्ने साधन हामी देख्छौं। तिम्रा खुरले खनिएको यो स्थान देख्छौं। यहाँ तिम्रा रक्षक कल्याणकारी डोरी छन्, यिनले सत्यको रक्षा गर्दछन्।

आत्मानं ते मनसारादजानामवो दिवा पतयन्तं पतङ्गम्।
शिरो अपश्यं पथिभिः सुगेभिररेणुभिर्जेहमानं पतत्रि ॥६॥

हे अश्व ! तल्लो भागबाट आकाशमार्ग हुँदै सूर्यतिर जाँदा तिम्रा आत्मालाई हामी विचार गरेर चिन्दछौं। सुगम र धुलोरहित मार्गमा जाँदै गर्दा तिम्रा तल्लो भागमा पर्ने हामीहरूले शिरभाग देख्छौं।

अत्रा ते रूपमुत्तममपश्यं जिगीषमाणमिष आ पदे गोः।
यदा ते मर्तो अनु भोगमानडादिद्ग्रसिष्ठ ओषधीरजीगः ॥७॥

हे अश्व ! यज्ञको कामना गर्ने तिम्रो श्रेष्ठ स्वरूप हामी सूर्यमण्डलमा विद्यमान देख्दछौं। यजमानले जुन बेला उत्तम हवि तिम्रा लागि समर्पित गरे, त्यसपछि नै तिमीले हव्यरूपी औषधी ग्रहण गर्‍यौ।

अनु त्वा रथो अनु मर्यो अर्वन्नु गावोऽनु भगः कनीनाम्।
अनु व्रातासस्तव सख्यमीयुरनु देवा ममिरे वीर्यं ते ॥८॥

हे चञ्चल स्वभावका ! रथ तिम्रै पछि लाग्दछ। मानिस, कन्याको सौभाग्य र गाईहरू तिम्रा पछि लाग्छन्। मनुष्य समुदायले तिम्रो मित्रता प्राप्त गरे भने देवगणले तिम्रो शौर्यलाई बयान गरेका छन्।

हिरण्यशृङ्गोऽयो अस्य पादा मनोजवा अवर इन्द्र आसीत्।
देवा इदस्य हविरद्यमायन्यो अर्वन्तं प्रथमो अध्यतिष्ठत् ॥९॥

सबैभन्दा पहिले स्वर्ण मुकुट धारण गरेर अश्वमाथि आरुढ हुने इन्द्रदेव थिए। त्यस अश्वका खुट्टा फलामजस्ता बलिया र मनजत्तिकै वेगवान् थिए। देवताहरूले नै यसको हविरूप भोजन ग्रहण गरे।

ईर्मान्तासः सिलिकमध्यमासः सं शूरणासो दिव्यासो अत्याः।
हंसाइव श्रेणिशो यतन्ते यदाक्षिषुर्दिव्यमज्मम‌श्वाः ॥१०॥

बलिया तिघ्रा र छाती, माझको कम्मर सानो हुने, बलियो, सूर्यको रथ तान्ने र लगातार कुद्ने अश्व पङ्क्तिबद्ध भएर हाँसजस्तै एकसमान रूपमा हिँड्छन्। त्यसो गर्दा स्वर्गका मार्गले दिव्यता प्राप्त गर्दछ।

तव शरीरं पतयिष्ण्वर्वन्तव चित्तं वातइव ध्रजीमान्।
तव शृङ्गाणि विष्ठिता पुरुत्रारण्येषु जर्भुराणा चरन्ति ॥११॥

हे चञ्चल प्रकृतिका ! तिम्रो शरीर माथितिर जाने र चित्तचाहिँ वायुसमान वेगवान् छ। तिम्रो दीप्ति विशेष प्रकारले रहेको वनको दावानलका रूपमा व्याप्त छ।

उप प्रागाच्छसनं वाज्यर्वा देवद्रीचा मनसा दीध्यानः।
अजः पुरो नीयते नाभिरस्यानु पश्चात्कवयो यन्ति रेभाः ॥१२॥

यशस्वी, मनसमान तीव्र गतिले हिँड्ने, तेजस्वी अश्व माथितिर देवमार्गमा जान्छ। अज त्यसका अघि हिँड्छ। नाभीले त्यसको अनुगमन गर्दछ। स्तोताहरू पाठ गर्दै पछिपछि लाग्दछन्।

उप प्रागात्परमं यत्सधस्थमर्वाँ अच्छा पितरं मातरं च।
अद्या देवाञ्जुष्टतमो हि गम्या अथा शास्ते दाशुषे वार्याणि ॥१३॥

हे शक्तिशाली अर्वन् ! सर्वश्रेष्ठ उच्च स्थान पाएका पालक र सम्माननीय मातापिताको स्थानमा रहेका द्यावा र पृथिवीसित तिमी भेट हुन्छौ। हे याजकहरू हो ! तिमीहरू पनि सद्गुणले सुशोभित हुँदै देवत्व प्राप्त गर। देवताहरूबाट अपार वैभव प्राप्त गर।

[सूक्त - १६४]

**ऋषि** - दीर्घतमा औचथ्य। **देवता** - वाक् आप धूम। **छन्द** - त्रिष्टुप् जगती पंक्ति।

अस्य वामस्य पलितस्य होतुस्तस्य भ्राता मध्यमो अस्त्यश्नः।
तृतीयो भ्राता घृतपृष्ठो अस्यात्रापश्यं विश्पतिं सप्तपुत्रम् ॥१॥

सुन्दर एवं जगत्का पालक होतालाई हामीले सात पुत्रहरूका साथमा देखेका छौं। यिनका माझिल्लो भाइको रूपमा सर्वव्यापी वायुदेव छन्। उनका तेस्रो भाइका रूपमा तेजस्वी पिठ्युँ भएका छन्।

सप्त युञ्जन्ति रथमेकचक्रमेको अश्वो वहति सप्तनामा।
त्रिनाभि चक्रमजरमनर्वं यत्रेमा विश्वा भुवनाधि तस्थुः ॥२॥

एउटा मात्रै पाङ्ग्रो भएका रथमा सातै नाम नारिएका छन्। सात नाम हुने एक अश्वले यो चक्र चलाउँछ। तीन वटा नाभीकेन्द्ररूपी धुरो भएको यो चक्र सधैंभरि गतिशील, अविनाशी र नथाक्ने खालको छ। यसै चक्रभित्र सम्पूर्ण लोक विद्यमान छ।

इमं रथमधि ये सप्त तस्थुः सप्तचक्रं सप्त वहन्त्यश्वाः।
सप्त स्वसारो अभि सं नवन्ते यत्र गवां निहिता सप्त नाम ॥३॥

यससम्बन्धी सात वटा चक्र वा अश्वले रथ तान्दछन्। त्यस ग्ना अथवा गाईभित्र सात नाम लुकेका छन्। तिनै सात बहिनीहरूले सातै स्वरमा यसको स्तुतिगान गर्दछन्।

को ददर्श प्रथमं जायमानमस्थन्वन्तं यदनस्था बिभर्ति।
भूम्या असुरसृगात्मा क्व स्वित्को विद्वांसमुप गात्प्रष्टुमेतत् ॥४॥

हड्डी नहुनेले हड्डी हुने शरीरधारीलाई पालनपोषण गर्दछन्। त्यस्ता स्वयम्भूलाई कसले देख्ला ? भूमिमा प्राण, रक्त र आत्मा कताबाट आए ? यस सम्बन्धमा कुन विद्वान्सित को सोध्न जाला ?

पाकः पृच्छामि मनसाविजानन्देवानामेना निहिता पदानि।
वत्से बष्कयेऽधि सप्त तन्तून्वि तत्निरे कवय ओतवा उ ॥५॥

देवताको यस गोप्य पदका सम्बन्धमा जान्न हामी काँचो बुद्धिका रुचिपूर्वक सोध्छौं। सुन्दर तन्त्रेरी बहर वा सूर्यको ज्ञान भएका देवताले सात वटा तन्तु कसरी फिँजाए ?

अचिकित्वाञ्चिकितुषश्चिदत्र कवीन्पृच्छामि विद्मने न विद्वान्।
वि यस्तस्तम्भ षळिमा रजांस्यजस्य रूपे किमपि स्विदेकम् ॥६॥

छ वटा लोक स्थिर गराउने अजन्मा प्रजापति रूपी तत्त्व कस्ता छन् ? तिनको स्वरूप कस्तो छ ? यस तत्त्वज्ञानसित हामीलाई छैन र जान्नका लागि तत्त्वज्ञान हुनेहरूसित पक्का पनि यस्तो सोध्छौं।

इह ब्रवीतु य ईमङ्ग वेदास्य वामस्य निहितं पदं वेः।
शीर्ष्णः क्षीरं दुह्रते गावो अस्य वव्रिं वसाना उदकं पदापुः ॥७॥

जसले सुन्दर र गतिमान् सूर्यको उत्पत्तिस्थान जानेका छन्, तिनले यो गोप्य रहस्य यहाँ आएर स्पष्ट गरुन्। यस सर्वोत्तम सूर्यका किरणरूपी गाईहरू पानी दोहन गरेर दिन्छन्। उनीहरू नै तेजस्वी भएर गोडाले पिएर सुकाउँछन्।

माता पितरमृत आ बभाज धीत्यग्रे मनसा सं हि जग्मे।
सा बीभत्सुर्गर्भरसा निविद्धा नमस्वन्त इदुपवाकमीयुः ॥८॥

पृथ्वीमाताले यज्ञअनुरूप उपलब्धिका लागि पितारूपी द्युलोकमा रहेका सूर्यदेवको आश्रय लिइन्। क्रियाभन्दा पहिले उनीहरूका मनको सम्पर्क भयो। माता गर्भरसले समृद्ध भइन्। त्यसपछि उनीहरूले आदरपूर्वक शिर झुकाएर विचारविमर्श गरे।

युक्ता मातासीद्धुरि दक्षिणाया अतिष्ठद्गर्भो वृजनीष्वन्तः।
अमीमेद्वत्सो अनु गामपश्यद्विश्वरूप्यं त्रिषु योजनेषु ॥९॥

समर्थ सूर्यदेवका धारण क्षमतामा पृथ्वीमाता अडिएकी छिन्। उनको गर्भ गमनशील वायुका बीचमा रहेको छ। बाछोसरिको बादल गाईरूपी किरणलाई देखेझैं कराउँछ। त्यसपछि तीनै वटाको भेट हुन्छ र विश्वको स्वरूप निर्माण हुन्छ।

तिस्रो मातॄस्त्रीन्पितॄन्बिभ्रदेक ऊर्ध्वस्तस्थौ नेमव ग्लापयन्ति।
मन्त्रयन्ते दिवो अमुष्य पृष्ठे विश्वविदं वाचमविश्वमिन्वाम् ॥१०॥

स्रष्टा प्रजापति एक्लैले पृथ्वी, अन्तरिक्ष र द्युलोकरूपी तीन माताहरू तथा अग्नि, वायु, र सूर्य गरी तीन पिताको भरणपोषण गरे र उनी सबैभन्दा अलग्ग बसे। यिनलाई थकाइ लाग्दैन। विश्वको रहस्य जानेर पनि सिङ्गो विश्वभन्दा पर रहने यी प्रजापतिका वाणीका सम्बन्धमा द्युलोकमा विचारविमर्श हुने गर्दछ।

द्वादशारं नहि तज्जराय वर्वर्ति चक्रं परि द्यामृतस्य।
आ पुत्रा अग्ने मिथुनासो अत्र सप्त शतानि विंशतिश्च तस्थुः ॥११॥

सूर्यको सृष्टि सञ्चालक चक्रमा बाह्र वटा राशिहरूको चक्र छ र त्यो चक्र द्युलोकका वरिपरि घुमिरहन्छ। यो चक्र कहिल्यै नरोकिई र पुरानो नभई घुम्छ। हे अग्निदेव ! संयुक्त रूपले रहने सात सय बीस पुत्रहरू यसै चक्रमा रहन्छन्।

पञ्चपादं पितरं द्वादशाकृतिं दिव आहुः परे अर्धे पुरीषिणम्।
अथेमे अन्य उपरे विचक्षणं सप्तचक्रे षळर आहुरर्पितम् ॥१२॥

अयन, महिना, ऋतु, पक्ष र दिनरात यी पाँच चरण सूर्यदेवका छन्। उनका बाह्र महिनारूपी बाह्र

आकृति छन् र जलको वर्षा गराउने पिता पनि उनै हुन्। ती सूर्यदेव दिव्यलोकका आधा भागमा रहन्छन् भन्ने मान्यता छ। अन्य विद्वान्हरू यी सूर्यदेवका अयन, महिना, ऋतु, पक्ष, दिन, रात र मुहूर्त गरी सात चक्र छन् भन्दछन्।

**पञ्चारे चक्रे परिवर्तमाने तस्मिन्ना तस्थुर्भुवनानि विश्वा।**
**तस्य नाक्षस्तप्यते भूरिभारः सनादेव न शीर्यते सनाभिः ॥१३॥**

अयन, महिना आदि पाँच धुरा भएको यस कालचक्रमा सिङ्गो लोक अटाउँछ। लोकको यस्तो भारी थाम्दा पनि यस चक्रको धुरो न त कहिल्यै तात्छ न भाँचिन्छ।

**सनेमि चक्रमजरं वि वावृत उत्तानायां दश युक्ता वहन्ति।**
**सूर्यस्य चक्षु रजसैत्यावृतं तस्मिन्नार्पिता भुवनानि विश्वा ॥१४॥**

नियन्त्रण गर्ने धुरो भएको र कहिल्यै नखिइने यो सृष्टिचक्र सधैँ चलिरहन्छ। अत्यन्त व्यापक प्रकृति उत्पन्न भइदिनाले यसलाई पञ्चप्राण र पञ्च उपप्राण वा अग्निका रूपमा रहेका जम्मा दस वटा घोडाले चलाउँछन्। सूर्यरूपी नेत्रलाई प्रकाशरूपी जलले ढाकेर गतिमान् हुन्छ। त्यसैभित्र सारा लोक विद्यमान् छ।

**साकञ्जानां सप्तथमाहुरेकजं षडिद्यमा ऋषयो देवजा इति।**
**तेषामिष्टानि विहितानि धामशः स्थात्रे रेजन्ते विकृतानि रूपशः ॥१५॥**

सँगै जन्मेर सँगै रहने यी छ र सात एकैबाट उत्पन्न भएका हुन्। यिनीहरू देवत्वबाट उत्पन्न ऋषि हुन्। यिनीहरू आआफ्ना बदलिँदा रूपमा आआफ्ना लक्षित उद्देश्यले, आआफ्ना स्थानमा रहे पनि गतिशील छन्।

**स्त्रियः सतीस्ताँ उ मे पुंस आहुः पश्यदक्षण्वान्न वि चेतदन्धः।**
**कविर्यः पुत्रः स ईमा चिकेत यस्ता विजानात्स पितुष्पितासत् ॥१६॥**

यी किरणरूपी उत्पादक स्त्रीहरू नै पुरुषरूपी उत्पादकका आधार हुन्। यो तथ्य सूक्ष्म दृष्टि हुनेले देख्न सक्छन्। दूरदर्शी पुत्रले यसलाई अनुभव गर्न सक्दछ। जसले यति जान्यो, पिताको पनि पिताजस्तै भएर उसले सृष्टिमा स्रष्टालाई सिर्जनशील गति दिन्छ।

**अवः परेण पर एनावरेण पदा वत्सं बिभ्रती गौरुदस्थात्।**
**सा कद्रीची कं स्विदर्धं परागात्क्व स्वित्सूते नहि यूथे अन्तः ॥१७॥**

गाईरूपी किरण द्युलोकभन्दा तल र पृथ्वीभन्दा माथि सधैँभरि घुम्दछन्। बाछोरूपी जीवन धारण गरेर यी कता जान्छन् ? कुन गोलार्धभन्दा बाहिर पुगेर जन्मन्छन् ? यस समूहका बीचमा होइन।

**अवः परेण पितरं यो अस्यानुवेद पर एनावरेण।**
**कवीयमानः क इह प्र वोचद्देवं मनः कुतो अधि प्रजातम् ॥१८॥**

द्युलोकभन्दा तलको यस पृथ्वीका पिता सूर्यदेव र पृथ्वीभन्दा माथिका अग्निदेवलाई जसले चिनेर उपासना गर्दछन्, तिनीहरू नै विद्वान् हुन्। यो दिव्यतासम्पन्न मन कहाँबाट उत्पन्न भयो ? यस रहस्यको जानकारी गराउने विद्वान् को होलान् ? उनले हामीलाई यो कुरो यहाँ आएर भनिदिऊन्।

**ये अर्वाञ्चस्ताँ उ पराच आहुर्ये पराञ्चस्ताँ उ अर्वाच आहुः।**
**इन्द्रश्च या चक्रथुः सोम तानि धुरा न युक्ता रजसो वहन्ति ॥१९॥**

गतिशील विश्वमा नजिक आउँदै गरेकालाई पर जाँदै गरेको पनि भनिन्छ र पर जाँदै गरेकालाई नजिकै आउँदै गरेको पनि भनिन्छ। हे सोमदेव ! तिमी र इन्द्रदेवले जुन चक्र चलाइरहेका छौ, त्यो धुरामा आबद्ध भएर संसारलाई वहन गर्दछ।

**द्वा सुपर्णा सयुजा सखाया समानं वृक्षं परि षस्वजाते।**
**तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्यो अभि चाकशीति ॥२०॥**

एउटै रुखका हाँगामा बसेका दुई सुन्दर चरामध्ये एउटाले स्वाद लिएर त्यसका फल खान्छ। अर्को त्यसलाई नखाईकन चारैतिर हेरिरहन्छ।

**यत्रा सुपर्णा अमृतस्य भागमनिमेषं विदथाभिस्वरन्ति।**
**इनो विश्वस्य भुवनस्य गोपाः स मा धीरः पाकमत्रा विवेश ॥२१॥**

रुखमा बसेर संसारमा लिप्त भएका मरणशील जीवात्माहरू सुखदुःखरूपी फल भोग्दै आफ्ना शब्दले परमात्मालाई स्तुति गर्दछन्। यस लोकका स्वामी र संरक्षक परमात्मा मजस्ता अज्ञानयुक्त जीवात्माभित्र पनि विद्यमान छन्।

यस्मिन्वृक्षे मध्वदः सुपर्णा निविशन्ते सुवते चाधि विश्वे।
तस्येदाहुः पिप्पलं स्वाद्वग्रे तन्नोन्नशद्यः पितरं न वेद ॥२२॥

संसाररूपी वृक्षमा प्राणरस पान गर्ने र वंश वृद्धि गर्ने जीवात्मा रहन्छन्। वृक्षमाथि मिठा फल छन्। जसले पितालाई चिन्दैनन् तिनी फलका आनन्दबाट वञ्चित हुन्छन्।

यद्गायत्रे अधि गायत्रमाहितं त्रैष्टुभाद्वा त्रैष्टुभं निरतक्षत।
यद्वा जगज्जगत्याहितं पदं य इत्तद्विदुस्ते अमृतत्वमानशुः ॥२३॥

पृथ्वीमा गायत्री छन्द, अन्तरिक्षमा त्रिष्टुप् र आकाशमा जगती छन्द स्थापित गर्नेलाई जसले चिन्दछ उसैले अमरत्व प्राप्त गर्दछ।

गायत्रेण प्रति मिमीते अर्कमर्केण साम त्रैष्टुभेन वाकम्।
वाकेन वाकं द्विपदा चतुष्पदाक्षरेण मिगते सप्त वाणीः ॥२४॥

गायत्री छन्दले प्राण, ऋचासमूहले सामवेद, त्रिष्टुप् छन्दले युजुर्वेद रचना गरेर दुई पद र चार पदका अक्षरले सातौं छन्दमय वाणी उत्पत्ति भयो।

जगता सिन्धुं दिव्यस्त भायद्रथन्तरे सूर्यं पर्यपश्यत्।
गायत्रस्य समिधस्तिस्र आहुस्ततो मह्ना प्र रिरिचे महित्वा ॥२५॥

गतिमान् सूर्यदेवका सहायताद्वारा प्रजापतिले द्युलोकमा जल स्थापित गरे। वर्षाका माध्यमबाट जल, सूर्यदेव र पृथ्वी संयुक्त हुन्छन्। सूर्य र द्युलोकमा रहेको प्राण, जल वर्षाबाट यस पृथ्वीमा प्रकट हुन्छ। गायत्रीका तीन पाउ भनेका अग्नि, विद्युत् र सूर्य हुन्। उनै प्रजापतिका तेजबाट नै ती तीन पाउ बलसम्पन्न हुन्छन् भन्ने गरिएको छ।

उप ह्वये सुदुघां धेनुमेतां सुहस्तो गोधुगुत दोहदेनाम्।
श्रेष्ठं सवं सविता साविषन्नोऽभीद्धो घर्मस्तदु षु प्र वोचम् ॥२६॥

सुखरूपी दुध दिने प्रकृतिरूपी गाईलाई हामी आह्वान गर्दछौं। कुशल साधकले नै यस गाईको दोहन गर्न सक्दछ। सवितादेव हामीलाई दुध प्रदान गरुन्। तपस्वी र तेजस्वीले त्यसलाई ग्रहण गर्न सक्छ भन्ने गरिन्छ।

हिङ्कृण्वती वसुपत्नी वसूनां वत्समिच्छन्ती मनसाभ्यागात्।
दुहामश्विभ्यां पयो अघ्न्येयं सा वर्धतां महते सौभगाय ॥२७॥

कहिल्यै घात गर्न नहुने गाई, मानिसका लागि अन्न, दुध, घिउ आदि ऐश्वर्य प्रदान गर्न चाहन्छ। आफ्ना बाछालाई मनले स्नेह गर्दै कराउँदै बाछानजिक आउँछ। त्यस गाईले मानव समुदायको महान् सौभाग्य बढाउँदै प्रचुर मात्रामा दुध दिन्छ।

गौरमीमेदनु वत्सं मिषन्तं मूर्धानं हिङ्ङकृणोन्मातवा उ।
सृक्वाणं घर्ममभि वावशाना मिमाति मायुं पयते पयोभिः ॥२८॥

गाई आँखा चिम्लेझैं बाछाको नजिक पुगेर कराउँछ। बाछाको शिर चाट्दै वात्सल्यपूर्ण शब्द गर्दछ। उसका मुखका नजिकै दुध भरिएका थुन लैजान्छ र कराउँछ। उसले दुध खुवाउँदै मायालु स्वरमा कराउँदै बाछालाई खुसी बनाउँछ।

अयं स शिङ्क्ते येन गौरभीवृता मिमाति मायुं ध्वसनावधि श्रिता।
सा चित्तिभिर्नि हि चकार मर्त्यं विद्युद्भवन्ती प्रति वव्रिमौहत ॥२९॥

बाछो विनाशब्द गाईसमक्ष प्रकट हुन्छ। गाई कराउँदै भावपूर्ण चेष्टाले मानिसलाई लज्जित गराउँछ। स्वच्छ दुध उत्पन्न गरेर उसले भाव प्रकट गर्दछ।

अनच्छये तुरगातु जीवमेजद् ध्रुवं मध्य आ पस्त्यानाम्।
जीवो मृतस्य चरति स्वधाभिरमर्त्यो मर्त्येना सयोनिः ॥३०॥

श्वासप्रश्वासमा अस्तित्व जोगाउने जीव शरीरबाट निस्केपछि शरीर निश्चल रूपमा ढल्छ। मरणशील शरीरका साथमा रहने आत्मा अविनाशी छ। त्यो अविनाशी आत्मा आफ्ना धारणशक्तिले सम्पन्न भएर सर्वत्र निर्बाध रूपमा विचरण गर्दछ।

अपश्यं गोपामनिपद्यमानमा च परा च पथिभिश्चरन्तम्।
स सध्रीचीः स विषूचीर्वसान आ वरीवर्ति भुवनेष्वन्तः ॥३१॥

कहिले नजिक र कहिले टाढाको मार्गबाट विचरण गरिरहने सूर्यदेव निरन्तर गतिशील हुँदा पनि

कहिल्यै ढल्दैनन्। उनी सम्पूर्ण विश्वलाई संरक्षण गर्दछन्। चारैतिर फैलिने तेज धारण गर्दै समस्त लोकमा विराजमान सूर्यदेवलाई हामी देख्छौं।

**य ईं चकार न सो अस्य वेद य ईं ददर्श हिरुगिन्नु तस्मात्।**
**स मातुर्योना परिवीतो अन्तर्बहुप्रजा निर्ऋतिमा विवेश ॥३२॥**

जसले यो जीवन बनायो, उसले यसलाई चिन्दैन। जसले यसलाई देख्यो, उसैसित यो लुकेको छ। माताको प्रजनन अङ्गमा यो छोपिएर बसेको छ। सन्तान उत्पत्ति गर्दै यसले स्वयं नै आफ्नो अस्तित्व गुमाउँछ।

**द्यौर्मे पिता जनिता नाभिरत्र बन्धुर्मे माता पृथिवी महीयम्।**
**उत्तानयोश्चम्वो३ र्योनिरन्तरत्रा पिता दुहितुर्गर्भमाधात् ॥३३॥**

हाम्रा पिता र बन्धुजस्तै द्युलोकमा बसेका छन्। उनै संसारको केन्द्र पनि हुन्। विशाल पृथिवी हाम्री माता हुन्। दुई पात्रका मध्य भागमा रहेका सूर्यदेव आफैंले उत्पन्न गरेका पृथ्वीमा गर्भ स्थापित गराउँछन्।

**पृच्छामि त्वा परमन्तं पृथिव्याः पृच्छामि यत्र भुवनस्य नाभिः।**
**पृच्छामि त्वा वृष्णो अश्वस्य रेतः पृच्छामि वाचः परमं व्योम ॥३४॥**

यस धर्तीको अन्तिम किनार कहाँ छ? सबै भुवनको केन्द्र कहाँ छ? अश्वको शक्ति कहाँ छ र वाणीको उद्गम कहाँ छ? यो सबै हामी तिमीसँग सोध्छौं।

**इयं वेदिः परो अन्तः पृथिव्या अयं यज्ञो भुवनस्य नाभिः।**
**अयं सोमो वृष्णो अश्वस्य रेतो ब्रह्मायं वाचः परमं व्योम ॥३५॥**

यज्ञवेदी नै पृथ्वीको अन्तिम किनारा हो। यज्ञ नै संसारचक्रको केन्द्र हो। सोम अश्वको शक्ति हो र ब्रह्मा नै वाणीको उत्पत्तिस्थान हो।

**सप्तार्धगर्भा भुवनस्य रेतो विष्णोस्तिष्ठन्ति प्रदिशा विधर्मणि।**
**ते धीतिभिर्मनसा ते विपश्चितः परिभुवः परि भवन्ति विश्वतः ॥३६॥**

सम्पूर्ण विश्वको निर्माण अपरा प्रकृतिको मन, प्राण र पञ्च भूतरूपी सात पुत्रले हुन्छ। यी सबै तत्त्वले सर्वव्यापक प्रजापतिका निर्देशअनुसार कर्तव्य निर्वाह गर्दछन्। उनीहरू आफ्नो ज्ञानशीलता, व्यापकता र सङ्कल्पशक्तिले सम्पूर्ण विश्वमा व्याप्त छन्।

**न वि जानामि यदिवेदमस्मि निण्यः सन्नद्धो मनसा चरामि।**
**यदा मागन्प्रथमजा ऋतस्यादिद्वाचो अश्नुवे भागमस्याः ॥३७॥**

आफू कस्तो छु भनी म जान्दिनँ। मूर्खझैं मनले बाँधिएर म हिँड्दछु। जब पहिले प्रकट भएको सत्य मेरासामु आयो, त्यसपछि मलाई वाणी प्राप्त भयो।

**अपाङ्प्राङेति स्वधया गृभीतोऽमर्त्यो मर्त्येना सयोनिः।**
**ता शश्वन्ता विषूचीना वियन्ता न्य१न्यं चिक्युर्न नि चिक्युरन्यम् ॥३८॥**

आत्मा अविनाशी भए पनि मरणशील शरीरसित आबद्ध हुनाले विविध योनिमा जान्छ। आफ्ना धारण क्षमताअनुसारका शरीरमा आउँछ र शरीरभेदले पृथक् रहन्छ। शरीर र आत्मा दुवै शाश्वत एवं गतिशील भए पनि विपरीत गतिका छन्। मानिस यिनीहरूमध्ये एउटा शरीरलाई जान्दछन् तर अर्को आत्मालाई जान्दैनन्।

**ऋचो अक्षरे परमे व्योमन्यस्मिन्देवा अधि विश्वे निषेदुः।**
**यस्तन्न वेद किमृचा करिष्यति य इत्तद्विदुस्त इमे समासते ॥३९॥**

अविनाशी ऋचाहरू परमाकाशमा व्याप्त छन्। तिनमा सम्पूर्ण देवशक्तिको वास छ। जसले यो तथ्य जान्दैन, त्यसका लागि ऋचाले के गर्ला र? जसले यो तथ्य जानेको छ, उसले यिनको सदुपयोग गर्दछ।

**सूयवसाद्भगवती हि भूया अथो वयं भगवन्तः स्याम।**
**अद्धि तृणमघ्न्ये विश्वदानीं पिब शुद्धमुदकमाचरन्ती ॥४०॥**

हे अवधनीय गौमाता! तिमी अति पौष्टिक घाँस खाएर सौभाग्यशालिनी छौ। तिमीसँगै हामी पनि सौभाग्यशाली हौं। तिमी शुद्ध घाँस र पानी खाँदै सर्वत्र विचरण गर।

गौरीर्मिमाय सलिलानि तक्षत्येकपदी द्विपदी सा चतुष्पदी।
अष्टापदी नवपदी बभूवुषी सहस्राक्षरा परमे व्योमन् ॥४१॥

गाईका ध्वनिले पक्कै रस छचल्काउँछ। त्यस गाईका एक, दुई, चार, आठ, अथवा नौ पद छन्दमा विभाजित हुँदै सहस्र अक्षर भएर व्यापक आकाशमा व्याप्त हुन पुग्छन्।

तस्याः समुद्रा अधि वि क्षरन्ति तेन जीवन्ति प्रदिशश्चतस्रः।
ततः क्षरत्यक्षरं तद्विश्वमुप जीवति ॥४२॥

सूर्यका रश्मिले जलधारा बग्दछन्। जुन जलका वर्षाले सम्पूर्ण दिशा प्रसन्न हुन्छन्, त्यसले सम्पूर्ण विश्वलाई जीवन प्राप्त हुन्छ।

शकमयं धूममारादपश्यं विषूवता पर एनावरेण।
उक्षाणं पृश्निमपचन्त वीरास्तानि धर्माणि प्रथमान्यासन् ॥४३॥

हामीले परैबाट धुवाँ देख्यौं। चारै दिशामा व्याप्त धुवाँको बीचमा अग्निलाई देख्यौं। त्यहाँ प्रत्येक उत्तम कार्य गर्नुभन्दा पहिले ऋत्विक्हरू सोमरस पकाउँछन्।

त्रयः केशिन ऋतुथा वि चक्षते संवत्सरे वपत एक एषाम्।
विश्वमेको अभि चष्टे शचीभिर्ध्राजिरेकस्य ददृशे न रूपम् ॥४४॥

तीनवटा किरण भएका पदार्थ ऋतुअनुसार देखा पर्दछन्। यिनीहरूमध्ये एउटा सूर्यले संस्कारको बीजारोपण गर्दछन्। अर्को अग्निले आफ्ना शक्तिले विश्वलाई प्रकाशित गर्दछन् र तेस्रो प्रत्यक्ष नदेखिने वायुको रूप हुन्।

चत्वारि वाक्परिमिता पदानि तानि विदुर्ब्राह्मणा ये मनीषिणः।
गुहा त्रीणि निहिता नेङ्गयन्ति तुरीयं वाचो मनुष्या वदन्ति ॥४५॥

परा, पश्यन्ती, मध्यमा र बैखरी वाणीका यी चार रूप छन् भनेर मनीषिहरूबाट थाहा भएको छ। यिनीहरूमध्ये पहिला तीन वाणीहरू प्रकट हुँदैनन्। सबै मानिसहरू वाणीको चौथो रूप बैखरी नै बोल्ने गर्दछन्।

इन्द्रं मित्रं वरुणमग्निमाहुरथो दिव्यः स सुपर्णो गरुत्मान्।
एकं सद्विप्रा बहुधा वदन्त्यग्निं यमं मातरिश्वानमाहुः ॥४६॥

सत् रूपमा रहेका एकै परमेश्वरका विभिन्न गुण र रूपको विद्वान्हरूले व्याख्या गरेका छन्। परमात्मालाई इन्द्र, मित्र, वरुण र अग्नि भनिएको छ। उही सशक्त परिपालक हुनाले सुपर्णका रूपमा सम्मानित छ।

कृष्णं नियानं हरयः सुपर्णा अपो वसाना दिवमुत्पतन्ति।
त आववृत्रन्त्सदनादृतस्यादिद् घृतेन पृथिवी व्युद्यते ॥४७॥

उत्तम गतिमान् सूर्यको किरण आफूसित जल लिएर सबैको आकर्षणको केन्द्र यानरूप सूर्यमण्डलका नजिक पुगेर अन्तरिक्षका मेघबाट जल बर्साएर पृथ्वीको सेचन गर्छ।

द्वादश प्रधयश्चक्रमेकं त्रीणि नभ्यानि क उ तच्चिकेत।
तस्मिन्त्साकं त्रिशता न शङ्कवोऽर्पिताः षष्टिर्न चलाचलासः ॥४८॥

एउटा चक्र छ। त्यसका बाह्र वटा गजले चक्का र धुरालाई जोडेका छन् र त्यसमा तीन वटा नाभीकेन्द्रहरू छन्। त्यसलाई कुनै पनि विद्वान्ले जान्दैनन्। त्यसमा तीन सय साठी वटा किलाहरू गतिशील रूपमा अडिएका छन्।

यस्ते स्तनः शशयो यो मयोभूर्येन विश्वा पुष्यसि वार्याणि।
यो रत्नधा वसुविद्यः सुदत्रः सरस्वति तमिह धातवे कः ॥४९॥

हे सरस्वती देवी ! तिम्रा स्तन सुखदायक, वरण योग्य, पुष्टिकारक, ऐश्वर्य दाता, कल्याणकारी विभूति प्रदायक छन्। तिनलाई संसारको पोषणका लागि प्रकट गर।

यज्ञेन यज्ञमयजन्त देवास्तानि धर्माणि प्रथमान्यासन्।
ते ह नाकं महिमानः सचन्त यत्र पूर्वे साध्याः सन्ति देवाः ॥५०॥

देवताहरूले यज्ञले यजन गरे, धर्मकर्म उनको प्रथम स्थान हो। देवताहरूले स्वर्गमा स्थान पाए। त्यहाँ पूर्णकामा साधना गर्ने देवताहरू नै रहन्छन्।

समानमेतदुदकमुच्चैत्यव चाहभिः ।
भूमिं पर्जन्या जिन्वन्ति दिवं जिन्वन्त्यग्नयः ॥५१॥

जल तातेर माथि उठ्दछ र उही वर्षाका रूपमा तल आउँछ। जल बर्सनाले भूमि भिज्छ र अग्निले दिव्यलोक सन्तुष्ट हुन्छ।

दिव्यं सुपर्णं वायसं बृहन्तमपां गर्भं दर्शतमोषधीनाम्।
अभीपतो वृष्टिभिस्तर्पयन्तं सरस्वन्तमवसे जोहवीमि ॥५२॥

द्युलोकमा विद्यमान रहने, उत्तम गति भएका, निरन्तर गतिशील, महिमाशाली, जलका केन्द्र, औषधी परिपुष्ट गर्ने, जलवर्षाबाट चारै दिशा प्रवाहमान जलका धाराले भूमिलाई सन्तुष्ट गराउने सूर्यदेवलाई हामीले आफ्नो संरक्षणका लागि निम्त्याएका छौं।

[सूक्त - १६५]

**ऋषि** - इन्द्र मरुद्गण अगस्त्य मैत्रावरुणि। **देवता** - मरुत्वानिन्द्र। **छन्द** - त्रिष्टुप्।

कया शुभा सवयसः सनीडाः समान्या मरुतः सं मिमिक्षुः।
कया मती कुत एतास एतेऽर्चन्ति शुष्मं वृषणो वसुया ॥१॥

एकै ठाउँमा रहने, एकै उमेरका मरुत्गण कुन शुभ तत्त्वले सेचन गर्दछन् ? कहाँबाट आए ? कुन मनसायले प्रेरित भएर, बलशाली मरुद्गणलाई ऐश्वर्यको कामना गर्नेहरूले बलका लागि उपासना गर्दछन्।

कस्य ब्रह्माणि जुजुषुर्युवानः को अध्वरे मरुत आ ववर्त।
श्येनाँ इव ध्रजतो अन्तरिक्षे केन महा मनसा रीरमाम ॥२॥

सधैं युवा देखिने मरुत्गण कसको स्तोत्र स्वीकार गर्दछन् ? मरुत्हरूलाई यज्ञतर्फ कसले प्रेरित गर्न सक्दछ ? अन्तरिक्षमा बाज पक्षीझैं विचरण गर्ने मरुत्हरूलाई कुन उदार र विशाल हृदयका भावनाले प्रसन्न गर्ने ?

कुतस्त्वमिन्द्र माहिनः सन्नेको यासि सत्पते किं त इत्था।
सं पृच्छसे समराणः शुभानैर्वोचेस्तन्नो हरिवो यत्ते अस्मे ॥३॥

हे महान् इन्द्रदेव ! तिमी एक्लै कहाँ जान्छौ ? तिमीहरू कसरी यस्ता भयौ ? हे अश्वले युक्त शोभनीय इन्द्रदेव ! नजिकै रहने सबैलाई तिमी कुशलताका विषयमा सोध्छौ। त्यसैले हाम्रो हित हुने जेजस्ता कुरा तिमी गर्न चाहन्छौ, त्यो भन।

ब्रह्माणि मे मतयः शं सुतासः शुष्म इयर्ति प्रभृतो मे अद्रिः।
आ शासते प्रति हर्यन्त्युक्थेमा हरी वहतस्ता नो अच्छ ॥४॥

मननशील स्तुति र सोम मेरा लागि सुखदायी होऊन्। मेरो बलशाली वज्र शत्रुतिर जान्छ। मेरो प्रशंसा गर्ने स्तुति मतिर आउँछ। दुवै अश्वले मलाई लक्ष्यमा पुर्याउँछन्।

अतो वयमन्तमेभिर्युजानाः स्वक्षत्रेभिस्तन्वः शुम्भमानाः।
महोभिरेताँ उप युज्महे न्विन्द्र स्वधामनु हि नो बभूथ ॥५॥

अत्यन्त बलवान् अश्वका महान् तेजले स्वयंलाई सजाएर तेजको उपयोग हामी शत्रु नाश गर्नका लागि गर्दछौं। त्यसैले हे इन्द्रदेव ! तिमी आफ्ना धारण क्षमता हाम्रो अनुकूल बनाऊ।

क्व स्या वो मरुतः स्वधासीद्यन्मामेकं समधत्ताहिहत्ये।
अहं ह्युग्रस्तविषस्तुविष्मान्विश्वस्य शत्रोरनमं वधस्नैः ॥६॥

हे मरुत्गण ! वृत्रवधका समयमा तिमीहरूले केवल म इन्द्रमा नै स्थापित गरेको स्वाभाविक शक्ति कहाँ थियो ? म स्वयं नै शक्तिशाली, बलवान र शूरवीर हुँ। मैले आफ्ना शस्त्रास्त्रले भयङ्करभन्दा भयङ्कर शत्रुलाई झुक्नका लागि विवश गराएँ।

भूरि चकर्थ युज्येभिरस्मे समानेभिर्वृषभ पौंस्येभिः।
भूरीणि हि कृणवामा शविष्ठेन्द्र क्रत्वा मरुतो यद्वशाम ॥७॥

हे शक्तिशाली इन्द्रदेव ! तिमीले हामी मरुत्हरूसित मिलेर आफ्नो सामर्थ्यअनुसार अनेकौं वीरतापूर्ण कार्य गरेका छौ। हे शक्तिसम्पन्न इन्द्रदेव ! हामीले पनि अति वीरतापूर्ण कार्य गरेका छौं। हामी आफ्ना पुरुषार्थले जेजस्तो चाहन्छौं, त्यो पाउँछौं।

वधीं वृत्रं मरुत इन्द्रियेण स्वेन भामेन तविषो बभूवान्।
अहमेता मनवे विश्वश्चन्द्राः सुगा अपश्चकर वज्रबाहुः ॥८॥

हे मरुत्गण ! आफ्ना बलबुताले नै मैले वृत्रासुरको संहार गरेँ र आफ्नै पराक्रमले म शक्तिसम्पन्न इन्द्र बनेँ। मानिस तथा प्राणीहरूको कल्याणका लागि हातमा वज्र धारण गरेर मैले नै आनन्ददायी जलका धारा बगाइदिएँ।

अनुत्तमा ते मघवन्नकिर्नु न त्वावाँ अस्ति देवता विदानः।
न जायमानो नशते न जातो यानि करिष्या कृणुहि प्रवृद्ध ॥९॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! तिमीभन्दा ठूलो धनी अर्को कुनै छैन। तिमीसमानको ज्ञानी पनि कोही छैन। हे महान् इन्द्रदेव ! तिमीद्वारा गरिएका कार्यको समानता न कसैले गर्न सक्यो, न पछि कसैले गर्न सक्ला।

एकस्य चिन्मे विभ्व१ स्त्वोजो या नु दधृष्वान्कृणवै मनीषा।
अहं ह्यु१ ग्रो मरुतो विदानो यानि च्यवमिन्द्र इदीश एषाम् ॥१०॥

म जुन काम गर्ने विचार गर्दछु, त्यो एकाग्र मनले गर्दछु। त्यसैले मेरा इन्द्र पदको कीर्ति ध्वजाझैँ चारैतिर फैलिँदै छ। हे मरुत्गण हो ! मभित्र वीरोचित शौर्य र विद्वत्ता छ, त्यसैले जता जान्छु, त्यतै अधिपति बनेर शक्तिको उपभोग गर्दछु।

अमन्दन्मा मरुतः स्तोमो अत्र यन्मे नरः श्रुत्यं ब्रह्म चक्र।
इन्द्राय वृष्णे सुमखाय मह्यं सख्ये सखायस्तन्वे तनूभिः ॥११॥

हे नेतृत्वकर्ता, मित्र मरुत्गण ! तिमीहरूले म इन्द्रका निम्ति प्रशंसाका स्तोत्र रचेका छौ, त्यसबाट मलाई अत्यन्त आनन्द आयो। वैभवशाली, शक्तिसम्पन्न, उत्तम याज्ञिक र शक्तिसम्पन्न मेरा सामर्थ्यलाई यस स्तोत्रले अझै पुष्टि गरेको छ।

एवेदेते प्रति मा रोचमाना अनेद्यः श्रव एषो दधानाः।
सञ्चक्ष्या मरुतश्चन्द्रवर्णा अच्छान्त मे छदयाथा च नूनम् ॥१२॥

हे मरुत्गण ! यसै गरी म इन्द्रलाई स्नेह प्रदान गर्द, प्रशंसनीय धनधान्य धारण गर र आनन्द प्रदायक स्वरूपले युक्त भएर चारै दिशामा मेरो यशोगान गर।

को न्वत्र मरुतो मामहे वः प्र यातन सखीँरच्छा सखायः।
मन्मानि चित्रा अपिवातयन्त एषां भूत नवेदा म ऋतानाम् ॥१३॥

हे मरुत्गण ! तिमीहरूको पूजाअर्चना कसले गर्दछन् भने त्यहाँ सित जान र मित्रजस्ता हितैषीहरूका नजिक यहाँ जाओ। उनीहरूले गरेका उद्देश्यपूर्ण स्तोत्रको अभिप्राय बुझ र त्यसलाई पूरा गर।

आ यद्दुवस्याद्दुवसे न कारुरस्माञ्चक्रे मान्यस्य मेधा।
ओ षु वर्त्त मरुतो विप्रमच्छेमा ब्रह्माणि जरिता वो अर्चत् ॥१४॥

हे मरुत्गण ! सम्माननीय स्तोताको मति हामीलाई प्राप्त होस्। हामी स्तोत्र गाएर तिमीहरूलाई स्तुति गर्न सकौँ। स्तोताले स्तोत्र गाएर स्तुति गर्छन्, त्यसैले तिमीहरू ती ज्ञानसम्पन्न स्तोत्रतिर मन लगाओ।

एष वः स्तोमो मरुत इयं गीर्मान्दार्यस्य मान्यस्य कारोः।
एषा यासीष्ट तन्वे वयां विद्यामेषं वृजनं जीरदानुम् ॥१५॥

हे मरुत्गण ! यो वाणी तिमीहरूकै हो। आनन्ददायी, सम्माननीय स्तोतालाई समृद्ध गर्नका लागि यसैमा तिमीहरू आओ। हामी पनि अन्न, बल, यश र धन प्राप्त गरौँ।

[सूक्त - १६६]

**ऋषि** - अगस्त्य मैत्रावरुणि। **देवता** - मरुद्गण। **छन्द** - जगती त्रिष्टुप्।

तन्नु वोचाम रभसाय जन्मने पूर्वं महित्वं वृषभस्य केतवे।
ऐधेव यामन्मरुतस्तुविष्वणो युधेव शक्रास्तविषाणि कर्तन ॥१॥

वर्षा गराउने मेघलाई विभाजित गर्ने हे वीर मरुत्गण हो ! हामी तिमीहरूका पुराना महत्त्वलाई यशोगान गर्दछौँ। हे गर्जनशील मरुत्गण ! योद्धा र दन्कँदो अग्निले झैँ आक्रमण गर्दै शत्रु संहार गर।

नित्यं न सूनुं मधु बिभ्रत उप क्रीडन्ति क्रीडा विदथेषु घृष्वयः।
नक्षन्ति रुद्रा अवसा नमस्विनं न मर्धन्ति स्वतवसो हविष्कृतम् ॥२॥

युद्धमा शत्रु संहार गर्ने, बालकझैँ मधुर क्रीडा गर्ने, रुद्रपुत्र मरुत्गण स्तोतालाई रक्षा गर्दछन्। त्यो रक्षा पिताले पुत्रलाई गरेझैँ हुन्छ। मरुत्गण हविदाता याजकहरूलाई कष्ट हुन दिँदैनन्।

यस्मा ऊमासो अमृता अरासत रायस्पोषं च हविषा ददाशुषे।
उक्षन्त्यस्मै मरुतो हिता इव पुरू रजांसि पयसा मयोभुवः ॥३॥

अविनाशी वीर मरुत्गणले संरक्षण शक्तिसम्पन्न भएर जुन हविदातालाई धनसम्पदाले परिपुष्ट गराए, तिनीहरूकै लागि काल्याणकारी मित्रझैँ सुखदायक भएर उब्जाउ भूमिलाई जलले मनग्गे भिजाउँछन्।

आ ये रजांसि तविषीभिरव्यत प्र व एवासः स्वयतासो अध्रजन्।
भयन्ते विश्वा भुवनानि हर्म्या चित्रो वो यामः प्रयतास्वृष्टिषु ॥४॥

हे मरुत्गण ! तिमीहरू गतिशील वीर छौ र आफ्ना शक्तिले सबैको संरक्षण गर्दछौ। आफ्नै नियममा रहेर तिमीहरू जब तीव्र गतिले दौडँदै आफ्ना शस्त्र चलाउँछौ, त्यति बेला संसारभरिका ठूलाठूला राजभवनहरू पनि काँम्दछन्। तिमीहरूको यो हलचल वास्तवमा आश्चर्यजनक छ।

यत् त्वेषयामा नदयन्त पर्वतान्दिवो वा पृष्ठं नर्या अचुच्यवुः।
विश्वो वो अज्मन्भयते वनस्पती रथीयन्तीव प्र जिहीत ओषधिः ॥५॥

हे मरुत्गण ! तीव्र गतिले हमला गर्दै तिमीहरू जब पहाडमा आफ्नो शब्द थर्काउँछौ र जनकल्याणको इच्छा गर्दै अन्तरिक्षका पृष्ठबाट गुञ्जन्छौ, त्यस बेला तिमीहरूका आक्रमणले सबै वृक्षहरू भयभीत हुन्छन्। समस्त औषधीहरू पनि रथमा चढेकी आइमाईजस्तै आत्तिन थाल्छन्।

यूयं न उग्रा मरुतः सुचेतुनारिष्टग्रामाः सुमतिं पिपर्तन।
यत्रा वो दिद्युद्रदति क्रिविर्दती रिणाति पश्वः सुधितेव बर्हणा ॥६॥

हे मरुत्गण ! आफ्ना सबल हातमा धारिलो हतियार लिएर तिमीहरू शत्रुसेना संहार गर्दछौ र शत्रुका हिंस्रक पशु मारिदिन्छौ। त्यस बेला हे पराक्रमी वीरहरू हो ! आफ्ना श्रेष्ठ आन्तरिक भावनाले हामीलाई असल प्रेरणा प्रदान गर र हाम्रा गाउँको नाश नगर।

प्र स्कम्भदेष्णा अनवभ्रराधसोऽलातृणासो विदथेषु सुष्टुताः।
अर्चन्त्यर्कं मदिरस्य पीतये विदुर्वीरस्य प्रथमानि पौंस्या ॥७॥

शत्रुसंहारक, आश्रयदाता, उत्तम प्रशंसनीय, वीर मरुत्हरूको ऐश्वर्य कसैले पनि खोस्न सक्दैन। वीर मरुत्हरू सोमरस पान गर्न सङ्ग्राम र यज्ञमा तेजस्वी देवताहरूको पूजा गर्दछन्। किनभने तिनीहरूमा वीरका शक्तिको यथोचित परीक्षण गर्ने क्षमता हुन्छ।

शतभुजिभिस्तमभिह्रुतेरघात्पूर्भी रक्षता मरुतो यमावत।
जनं यमुग्रास्तवसो विरप्शिनः पाथना शंसात्तनयस्य पुष्टिषु ॥८॥

हे पराक्रमी, बलिष्ठ र सामर्थ्यवान् वीर मरुत्हरू हो ! तिमीहरू जसलाई विनाश, पापकृत्य र परनिन्दाबाट जोगाउँछौ, उनीहरूले आफ्ना सन्तानलाई राम्रोसँग हुर्काउन र पालनपोषण गर्न सकून् भनेर सयौँ उपभोगका साधन प्रदान गर। आफ्ना सामर्थ्यले संरक्षण दिएर, अभेद्य नगरीमा निवासयोग्य बनाओ।

विश्वानि भद्रा मरुतो रथेषु वो मिथस्पृध्येव तविषाण्याहिता।
अंसेष्वा वः प्रपथेषु खादयोऽक्षो वश्चक्रा समया वि वावृते ॥९॥

हे वीर मरुत्हरू हो ! तिमीहरूका रथमा सबै कल्याणकारी वस्तु स्थापित छन्। तिमीहरूका काँधमा प्रतिस्पर्धा गर्न योग्य शक्तिशाली हतियार छन्। लामो बाटाका लागि पर्याप्त खाद्यान्न सामग्री एकत्र छ। तिमीहरूका रथ र पाङ्ग्राहरू समयअनुसार घुम्ने गर्दछन्।

भूरीणि भद्रा नर्येषु बाहुषु वक्षःसु रुक्मा रभसासो अञ्जयः।
अंसेष्वेताः पविषु क्षुरा अधि वयो न पक्षान्व्यनु श्रियो धिरे ॥१०॥

जनहितकारी यी वीर मरुत्हरूका बाहुमा यथेष्ट कल्याणकारी बल छ। उनीहरूका वक्षस्थल एवं काँधमा विभिन्न वर्णले युक्त चलिया रत्नका आभूषणहरू सुशोभित छन्। उनीहरूका वज्र तिखो धार भएका छन्। पक्षीले पङ्ख धारण गरेझैँ यी वीरहरूले विविध विभूति धारण गरेका छन्।

महान्तो मह्ना विभ्वोऽ विभूतयो दूरेदृशो ये दिव्या इव स्तृभिः।
मन्द्राः सुजिह्वाः स्वरितार आसभिः संमिश्ला इन्द्रे मरुतः परिष्टुभः ॥११॥

जुन वीर मरुत्गण आफ्नो महानताले सामर्थ्यवान्, ऐश्वर्यसम्पन्न, आकाशका नक्षत्रसरि देदीप्यमान, दूरदर्शी, उत्साही सुन्दर वाणीले मधुर गान गर्ने खालका छन्, उनीहरू इन्द्रदेवका सहयोगी हुन्। त्यसैले हरेक किसिमले प्रशंसनीय छन्।

तद्वः सुजाता मरुतो महित्वनं दीर्घं वो दात्रमदितेरिव व्रतम्।
इन्द्रश्चन त्यजसा वि ह्रुणाति तज्जनाय यस्मै सुकृते अराध्वम् ॥१२॥

हे उत्तम कुलमा जन्मिएका वीर मरुत्गण ! तिमीहरूको उदारता अदितिजत्तिकै महान् छ। यो तिमीहरूको महानता वास्तवमा प्रसिद्ध छ। जुन पुण्यात्मा मानिसलाई तिमीहरू आफ्ना त्यागी भावनाले सहयोग प्रदान गर्दछौ, इन्द्रदेव पनि उसलाई हानी गर्दैनन्।

तद्वो जामित्वं मरुतः परे युगे पुरू यच्छंसममृतास आवत।
अया धिया मनवे श्रुष्टिमाव्या साकं नरो दंसनैरा चिकित्रिरे ॥१३॥

हे अमरवीर मरुत्हरू हो ! तिमीहरूका भ्रातृत्वको ख्याति चारै दिशामा व्याप्त छ। उहिले जुन स्तोत्र सुनेर तिमीहरू उचित किसिमले हाम्रो संरक्षण गर्दथ्यौ, उनै स्तोत्रका प्रभावले पराक्रमी नेतृत्व प्रदान गर। तिमीहरू सबै मानिसलाई कर्मअनुसार उनीहरूका ऐश्वर्यको रक्षा गर्दै दोष हटाइदिन्छौ।

येन दीर्घं मरुतः शूशवाम युष्माकेन परीणसा तुरासः।
आ यत्ततनन्वृजने जनास एभिर्यज्ञेभिस्तदभीष्टिमश्याम् ॥१४॥

हे गतिशील वीर मरुत्गण ! तिमीहरूका जुन महान् ऐश्वर्यका सहयोगले हामी विशाल दायित्व निर्वाह गर्दछौं र जेले समरक्षेत्रका चारै दिशामा विजयी हुन्छौं, ती सबै सामर्थ्य हामी यज्ञका कर्महरूबाट प्राप्त गर्न सकौं।

एष वः स्तोमो मरुत इयं गीर्मान्दार्यस्य मान्यस्य कारोः।
एषा यासीष्ट तन्वे वयां विद्यामेषं वृजनं जीरदानुम् ॥१५॥

हे शूरवीर मरुत्गण ! महान् कविबाट रचिएका आनन्दप्रद काव्यको रचना तिमीहरूकै प्रशंसाका लागि हुन्छ। यो स्तुति तिमीहरूका कामना पूर्ति एवं शरीरमा बल बढाउनका लागि प्राप्त होस्। तिमीहरू हामीलाई अन्न, बल र विजयश्री चाँडै प्रदान गर।

[सूक्त - १६७]

**ऋषि** - अगस्त्य मैत्रावरुणि। **देवता** - इन्द्र मरुद्गण। **छन्द** - त्रिष्टुप्।

सहस्रं त इन्द्रोतयो नः सहस्रमिषो हरिवो गूर्ततमाः।
सहस्रं रायो मादयध्यै सहस्रिण उप नो यन्तु वाजाः ॥१॥

हे अश्वयुक्त इन्द्रदेव ! तिम्रा हजारौं रक्षा साधनहरू हाम्रै लागि हुन्। हे इन्द्रदेव ! हजारौं प्रकारका प्रशंसनीय अन्न, आनन्दित गराउने धन र असीमित बल हामीलाई प्रदान गर।

आ नोऽवोभिर्मरुतो यान्त्वच्छा ज्येष्ठेभिर्वा बृहद्दिवैः सुमायाः।
अध यदेषां नियुतः परमाः समुद्रस्य चिद्धनयन्त पारे ॥२॥

अत्यन्त कुशल वीर मरुत्गण पुरुषार्थी संरक्षण सामर्थ्य र महान् ऐश्वर्यका साथ हाम्रा नजिक आऊन्। यिनीहरूका नियुत नामका अश्वले समुद्रपारिबाट धन ल्याउँछन्।

मिम्यक्ष येषु सुधिता घृताची हिरण्यनिर्णिगुपरा न ऋष्टिः।
गुहा चरन्ती मनुषो न योषा सभावती विदथ्येव सं वाक् ॥३॥

मेघमण्डलको विद्युत्जस्तै वीर मरुत्गणका बलिया हातमा सुनजस्तै टल्कने तरवार म्यानभित्र लुकेका छन्। विद्वान्को बोलीजस्ता ती तरवार विशेष अवस्थामा बाहिर आएर आफ्नो परिचय दिन्छन्।

परा शुभ्रा अयासो यव्या साधारण्येव मरुतो मिमिक्षुः।
न रोदसी अप नुदन्त घोरा जुषन्त वृधं सख्याय देवाः ॥४॥

गतिमान् र तेजस्वी मरुत्गण भूमिमा परसम्म पानीको वर्षा गराउँछन्। साधारण व्यक्तिले जस्तो मरुत्गणले द्युलोक र भूलोकमा विद्यमान कसैको उपेक्षा गर्दैनन्, सबैसित मित्रता राख्दछन्। यसै कारणले यिनीहरू महान् छन्।

जोषद्यदीमसुर्या सचध्यै विषितस्तुका रोदसी नृमणाः।
आसूर्येव विधतो रथं गात्त्वेषप्रतीका नभसो नेत्या ॥५॥

मानिसको मन हरण गर्ने, जीवन प्रदायिनी विद्युत्ले मरुत्गणलाई स्वीकार गर्छ। विभिन्न किरण समेटेर सूर्यजस्तै तेजस्वी विद्युत् मरुत्गणसँगै रथमा आरूढ हुन्छ।

आस्थापयन्त युवतिं युवानः शुभे निमिश्लां विदथेषु पज्राम्।
अर्को यद्वो मरुतो हविष्मान्गायद्गाथं सुतसोमो दुवस्यन् ॥६॥

हे वीर मरुत्गण ! हविष्यान्नसहित, सोमरस लिएर सम्मान प्राप्त साधकहरू यज्ञमा स्तोत्र गाउँदै तिमीहरू सबैको पूजा गर्दछन्। त्यस बेला याजकका बलशाली नवयौवना पत्नीलाई तिमी शुभ यज्ञको सन्मार्गतर्फ प्रेरित गर्दछौ।

प्र तं विवक्मि वक्म्यो य एषां मरुतां महिमा सत्यो अस्ति।
सचा यदीं वृषमणा अहंयुः स्थिरा चिज्जनीर्वहते सुभागाः ॥७॥

वीर मरुत्गणको स्तुत्य महिमा जस्तो छ, हामी त्यस्तै बयान गर्दछौं। उनीहरूको महिमाअनुसार अडिएको भूमि पनि उनीहरूकै अनुसरण गर्छ। यस्ता शक्तिवान्हरूसित प्रेम गर्दै, स्वाभिमानको रक्षा गर्दै सौभाग्यशाली ज्ञानको अभिवृद्धि गर्दछ।

पान्ति मित्रावरुणाववद्याच्चयत ईमर्यमो अप्रशस्तान्।
उत च्यवन्ते अच्युता ध्रुवाणि वावृध ईं मरुतो दातिवारः ॥८॥

मित्र, वरुण र अर्यमाले निन्दनीय दोषी चरित्र र निन्दनीय वस्तुहरूको उपयोग गर्नबाट तिमीहरूलाई जोगाउँछन्। हे मरुत्गण ! अडिग र अपराजेयलाई पनि तिमीहरू पदबाट च्युत गरिदिन्छौ। तिमीहरूले दिएको सहयोग निरन्तर बढिरहन्छ।

नही नु वो मरुतो अन्त्यस्मे आरात्ताच्चिच्छवसो अन्तमापुः।
ते धृष्णुना शवसा शूशुवांसोऽर्णो न द्वेषो धृषता परि ष्ठुः ॥९॥

हे वीर मरुत्गण ! तिमीहरूको सामर्थ्य अनन्त छ। त्यसलाई टाढा या नजिकका कुनै ठाउँबाट पनि जान्नु असम्भव छ। तिमीहरूका शक्तिले शत्रुका सेनालाई पानीले छेकारो हालेझैं र नाश गराइदिन्छ।

वयमद्येन्द्रस्य प्रेष्ठा वयं श्वो वोचेमहि समर्ये।
वयं पुरा महि च नो अनु द्यून् तन्न ऋभुक्षा नरामनु ष्यात् ॥१०॥

आज हामी इन्द्रदेवका विशेष कृपापात्र भएका छौं। यसै गरी आगामी दिनमा पनि उनका कृपापात्र बनिरहौं। हामी इन्द्रदेवलाई प्रतिदिन प्रार्थना गर्दछौं, त्यसबाट हामी सधैं विजयश्री प्राप्त गर्दै महान् हुन पाऔं। इन्द्रदेवको कृपा हामी सबैका लागि अनुकूल होस्।

एष वः स्तोमो मरुत इयं गीर्मान्दार्यस्य मान्यस्य कारोः।
एषा यासीष्ट तन्वे वयां विद्यामेषं वृजनं जीरदानुम् ॥११॥

हे मरुत्गण ! यो स्तोत्र तिमीहरूका लागि उच्चारण गर्दै छौं। त्यसैले आनन्दप्रद र सम्माननीय भएर तिमीहरू स्तोताको शारीरिक पोषणका लागि आओ र हामीलाई पनि अन्न, बल र विजयश्री उपलब्ध गराउने ऐश्वर्य प्रदान गर।

[सूक्त - १६८]

**ऋषि** - अगस्त्य मैत्रावरुणि। **देवता** - मरुद्गण। **छन्द** - जगती त्रिष्टुप्।

यज्ञायज्ञा वः समना तुतुर्वणिर्धियंधियं वो देवया उ दधिध्वे।
आ वोऽर्वाचः सुविताय रोदस्योर्महे ववृत्यामवसे सुवृक्तिभिः ॥१॥

हे मरुत्गण ! तिम्रो मनको अनुकूलताले नै प्रत्येक यज्ञीय कर्म तत्परताका साथ सम्पन्न गराउँछ। तिम्रो चिन्तन देवत्वतर्फ उन्मुख छ। हामी आकाश र पृथ्वीको स्थिरता र संरक्षणको कामना गर्दै भव्य स्तुतिका साथ तिमीहरूलाई यहाँ आह्वान गर्दछौं।

वव्रासो न ये स्वजाः स्वतवस इषं स्वरभिजायन्त धूतयः।
सहस्रियासो अपां नोर्मय आसा गावो वन्द्यासो नोक्षणः ॥२॥

हे मरुत्गण ! आफ्ना सामर्थ्यले अत्यधिक पौष्टिक अन्न प्राप्तिका लागि तिमीहरू स्वयं प्रकट भएका छौ। जलको लहरझैं हजारौं मानिसबाट प्रशंसित छौ। पूज्य गाई आदि पशुधनजस्तै भएर तिमीहरू सधैं हाम्रा नजिकै रहिदेओ।

सोमासो न ये सुतास्तृप्तांशवो हृत्सु पीतासो दुवसो नासते।
एषामंसेषु रम्भिणीव रारभे हस्तेषु खादिश्च कृतिश्च सं दधे ॥३॥

सोमरस पान गर्नाले जस्तो सन्तुष्टि हुन्छ, मरुत्‌गणका काँधमा सुशोभित हतियारको आश्रय पाउँदा सेना उस्तै प्रसन्न एवं निर्भय हुन्छन्। मरुत्‌गणका हातमा भएका तरबार पनि सुहाउँदा देखिन्छन्।

अव स्वयुक्ता दिव आ वृथा ययुरमर्त्याः कशया चोदत त्मना।
अरेणवस्तुविजाता अचुच्यवुर्दृळ्हानि चिन्मरुतो भ्राजदृष्टयः ॥४॥

आफ्नै इच्छाले काममा लाग्ने मरुत्‌गण दिव्यलोकबाट सहजै अन्तरिक्षमा आउँछन्। उनीहरू आफ्ना शक्तिले प्रेरणा दिऊन्। प्रखर र तेजस्वी शक्तिले हतियार धारण गर्ने यी वीर मरुत्‌गण जतिसुकै बलिया शत्रुलाई पनि परास्त गरिदिन्छन्।

को वोऽन्तर्मरुत ऋष्टिविद्युतो रेजति त्मना हन्वेव जिह्वया।
धन्वच्युत इषां न यामनि पुरुप्रैषा अहन्योऽ नैतशः ॥५॥

हे हतियारले सुशोभित वीर मरुत्‌गण ! तिमीहरू अन्न वृद्धिका लागि विशेष प्रेरणा प्रदान गर्दछौ। धनुषबाट छोडिएको वाणझैं तेज, प्रशिक्षित अश्वझैं नियमित र जिब्रोसँगै आफैं चल्ने चिउँडोजस्तै स्वतःस्फुर्त तिमीहरूलाई कसले गतिशील बनाउनुपर्ला र ?

क्व स्विदस्य रजसो महस्परं क्वावरं मरुतो यस्मिन्नायय।
यच्च्यावयथ विथुरेव संहितं व्यद्रिणा पतथ त्वेषमर्णवम् ॥६ ॥

हे वीर मरुत्‌गण ! तिमीहरू जुन महान् तथा असीम अन्तरिक्षबाट आउँछौ, त्यसको आदि र अन्त्य कहाँ होला ? जब तिमीहरू बाक्लो बादल हल्लाउँछौ, त्यस बेला तेजस्वी बादल पनि वज्रका प्रहारले आश्रयहीन हुन्छ र वर्षा गर्न थाल्छ।

सातिर्न वोऽमवती स्वर्वती त्वेषा विपाका मरुतः पिपिष्वती।
भद्रा वो रातिः पृणतो न दक्षिणा पृथुज्रयी असुर्येव जञ्जती ॥७॥

हे वीर मरुत्‌गण ! तिमीहरूको सहयोग सम्पदाजस्तै छ। त्यो सहयोगरूपी सम्पदा सामर्थ्यवान्, सुखदायी, तेजसम्पन्न, विशिष्ट फलदायक, शत्रुदलका संहारकर्ता र कल्याणकारी छ। तिमीहरूको कृपा दक्षिणाझैं विजय प्रदान गर्ने र दैवी शक्तिजस्तै शत्रु परास्त गर्ने खालको छ।

प्रति ष्टोभन्ति सिन्धवः पविभ्यो यदभ्रियां वाचमुदीरयन्ति।
अव स्मयन्त विद्युतः पृथिव्यां यदी घृतं मरुतः प्रुष्णुवन्ति ॥८॥

वीर मरुत्‌हरूका रथका पाङ्ग्राबाट मेघको गर्जनजस्तै प्रतिध्वनि निस्कँदा नदीका जलप्रवाहमा ठूलो खलबली मच्चिन्छ। वीर मरुत्‌गणले जलको वर्षा गर्दा पृथ्वीमा विद्युत्‌का तरङ्गहरूले मानौं ख्यालठट्टा गरेका हुन् कि जस्तो देखिन्छन्।

असूत पृश्निर्महते रणाय त्वेषमयासां मरुतामनीकम्।
ते सप्सरासोऽजनयन्ताभ्वमादित्स्वधामिषिरां पर्यपश्यन् ॥९॥

मातृभूमिका प्रेरणाले महासङ्ग्रामका लागि गतिशील वीर मरुत्‌हरूको प्रखर तेजस्वी सेना सङ्गठित भएर अस्तित्वमा आयो। शत्रुमाथि प्रहार गर्ने यी वीरले सङ्ग्राममा प्रखर तेजको परिचय दिए। त्यसपछि सबैले यिनको अन्न उत्पादक तथा धारण क्षमता चारैतिर पुगिसकेको अनुभव गरे।

एष वः स्तोमो मरुत इयं गीर्मान्दार्यस्य मान्यस्य कारोः।
एषा यासीष्ट तन्वे वयां विद्यामेषं वृजनं जीरदानुम् ॥१०॥

हे वीर मरुत्‌गण ! सम्माननीय कविबाट तिमीहरूलाई प्रसन्न गर्नका लागि रचेका काव्य हामी समर्पित गर्दछौं। यस स्तुतिले तिमीहरूलाई बलियो बनाओस्। यिनले हामीलाई पनि अन्न, बल र विजय प्राप्त गराऊन्।

[सूक्त - १६९]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप् चतुष्पदाविराट्।

महश्चित्त्वमिन्द्र यत एतान्महश्चिदसि त्यजसो वरूता।
स नो वेधो मरुतां चिकित्वान्त्सुम्ना वनुष्व तव हि प्रेष्ठा ॥१॥

हे इन्द्रदेव ! तिमी महान् देवता हौ र त्यागका प्रतिमूर्ति मरुत्‌गणका संरक्षक पनि हौ। हे ज्ञानसम्पन्न इन्द्रदेव ! हामीसित तिमी परिचित छौ। त्यसैले मरुत्‌गणका साथ आफ्ना प्रिय सामग्री हामीलाई प्रदान गर।

अयुजन्त इन्द्र विश्वकृष्टीर्विदानासो निष्षिधो मर्त्यत्रा।
मरुतां पृत्सुतिर्हासमाना स्वर्मीढस्य प्रधनस्य सातौ ॥२॥

हे इन्द्रदेव ! जुन मरुत्गणका सेना युद्ध प्रारम्भ भएपछि विशेष हर्षित हुँदै सुखको अनुभव गर्दछन्। शत्रुलाई यद्धा भगाउने तिनीहरूलाई सम्पूर्ण मानिसको सर्वोत्तम जानकारी छ। ती मरुत्गणले तिम्रै सहयोग गर्दछन्।

अम्यक्सा त इन्द्र ऋष्टिरस्मे सनेम्यभ्वं मरुतो जुनन्ति।
अग्निश्चिद्धि ष्मातसे शुशुक्वानापो न द्वीपं दधति प्रयांसि ॥३॥

हे इन्द्रदेव ! तिमीबाट सिर्जना गरिएको वज्र हामीलाई उपलब्ध होस्। मरुत्गण सधैं जल बर्साउँछन्। अग्निलाई काठले र द्वीपलाई पानीले आफूभित्र पालेझैं मरुत्गणले हामीलाई अन्न दिएर पालनपोषण गर्दछन्।

त्वं तू न इन्द्र तं रयिं दा ओजिष्ठया दक्षिणयेव रातिम्।
स्तुतश्च यास्ते चकनन्त वायोः स्तनं न मध्वः पीपयन्त वाजैः ॥४॥

हे इन्द्रदेव ! मिठो दुधले स्तनहरू परिपुष्ट भएझैं हाम्रा स्तोत्रको उच्चारणले तिमीहरू प्रसन्न होओ। हामीलाई अन्न आदि अभीष्ट कुराले परिपुष्ट गर। दक्षिणामा प्राप्त हुने धनजस्तै धनसम्पदाले हामीलाई सम्पन्न गराऊ।

त्वे राय इन्द्र तोशतमाः प्रणेतारः कस्य चिदृतायोः।
ते षु णो मरुतो मृडयन्तु ये स्मा पुरा गातूयन्तीव देवाः ॥५॥

हे इन्द्रदेव ! तिमीसित यजमानहरूलाई सन्तुष्ट गरेर यज्ञीय सत्कर्मतर्फ प्रेरित गर्ने खालका धनसम्पदाहरू छन्। हे इन्द्रदेव ! प्राचीन कालदेखि नै यज्ञरूपी सत्कर्ममा अभ्यस्त मरुत्गणले हामीलाई सुख र सौभाग्य प्रदान गरुन्।

प्रति प्र याहीन्द्र मीढ्हुषो नॄन्महः पार्थिवे सदने यतस्व।
अध यदेषां पृथुबुध्नास एतास्तीर्थे नार्यः पौंस्यानि तस्थुः ॥६॥

हे इन्द्रदेव ! व्यापक रूपमा जलको वर्षा गर्नका लागि अगुवा मानिने मरुत्गणका नजिकै जाऊ। त्यहाँ उनीहरूसितै मिलेर भूमण्डलमा तिमी आफ्ना पराक्रमको परिचय देऊ। युद्धमा पराक्रम गरेझैं मरुत्का अश्वले आक्रमण गर्दछन्।

प्रति घोराणामेतानामयासां मरुतां शृण्व आयतामुपब्दिः।
ये मर्त्यं पृतनायन्तमूमैर्ऋणावानं न पतयन्त सर्गैः ॥७॥

हे इन्द्रदेव ! अपराधी ऋणीलाई दण्डित गरिएझैं इन्द्रदेवका सहयोगी मरुत्गण युद्धको रहर गर्ने असुरलाई शस्त्रले प्रहार गरेर भुइँमा पछार्दछन्। त्यस बेला शीघ्र गमनशील, आक्रमणकारी र शत्रुलाई थुत्ने मरुत्हरूको भयङ्कर शब्द सुनिन्छ।

त्वं मानेभ्य इन्द्र विश्वजन्या रदा मरुद्भिः शुरुधो गोअग्राः।
स्तवानेभिः स्तवसे देव देवैर्विद्यामेषं वृजनं जीरदानुम् ॥८॥

हे इन्द्रदेव ! तिमी मरुत्हरूका सहयोगबाट विश्व उत्पादक सामर्थ्यले, आफ्नो प्रतिष्ठा बढाउनका लागि गाई अगाडि राखेर युद्ध गरिरहेका शोषणकारी शत्रुका सेनालाई संहार गर। हे इन्द्रदेव ! तिम्रो प्रार्थना स्तुत्य देवताहरूसँगै गरिन्छ। हामी तिम्रा सहयोगबाट अन्न, बल र विजयश्री प्राप्त गरौं।

[सूक्त - १७०]

ऋषि - इन्द्र अगस्त्य मैत्रावरुणि। देवता - इन्द्र। छन्द - बृहती अनुष्टुप् त्रिष्टुप्।

न नूनमस्ति नो श्वः कस्तद्वेद यदद्भुतम्।
अन्यस्य चित्तमभि सञ्चरेण्यमुताधीतं वि नश्यति ॥१॥

हे इन्द्रदेव ! जे आज छैन, त्यो भोलि पनि हुनेछैन। जे भएकै छैन, त्यो कसरी जान्न सकिन्छ ? चित्त चलायमान छ, त्यसले सङ्कल्प गर्छ, त्यसो हुँदा बदलिन सक्छ।

किं न इन्द्र जिघांससि भ्रातरो मरुतस्तव।
तेभिः कल्पस्व साधुया मा नः समरणे वधीः ॥२॥

हे इन्द्रदेव ! तिमी किन म निरपराधीलाई वध गर्न चाहन्छौ। मरुत्गण तिम्रा भाइहरू हुन्। उनीहरूसँगै तिमी यज्ञको श्रेष्ठ भाग प्राप्त गर। हे इन्द्रदेव ! हामीलाई युद्धक्षेत्रमा हिंसित नगर।

किं नो भ्रातरगस्त्य सखा सन्नति मन्यसे।
विद्मा हि ते यथा मनोऽस्मभ्यमिन्न दित्ससि ॥३॥

हे भ्रातृस्वरूप अगस्त्य ! तिमी हाम्रा मित्र भएर हाम्रै अपमान किन गर्दै छौ ? तिम्रो मन लोभी भावनाले ग्रस्त छ भन्ने हामी राम्रोसित जान्दछौँ। तिमी हाम्रो भाग हामीलाई नदिन खोज्दै छौ।

अरं कृण्वन्तु वेदिं समग्निमिन्धतां पुरः। तत्रामृतस्य चेतनं यज्ञं ते तनवावहै॥

याज्ञिकहरू यज्ञवेदिका राम्ररी सजाउन्। त्यहाँ सबैभन्दा पहिले अग्नि प्रज्वलित गरुन्। त्यहाँ तिम्रा निमित्त अमरत्व जागृत गर्ने यज्ञीय भावना विस्तार गरुन्।

त्वमीशिषे वसुपते वसूनां त्वं मित्राणां मित्रपते धेष्ठः।
इन्द्र त्वं मरुद्भिः सं वदस्वाध प्राशान ऋतुथा हवींषि ॥५॥

हे धनका अधिपति इन्द्रदेव ! तिमी सम्पूर्ण धन आफ्नै स्वामित्वमा राख्दछौ। हे मित्रका रक्षक ! तिमीलाई मित्रहरूले विशेष रूपमा स्वीकार गर्दछन्। हे इन्द्रदेव ! तिमी मरुत्गणप्रति सद्व्यवहार गर र ऋतुअनुसार हामीले दिएको आहुति सेवन गर।

[सूक्त - १७१]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - मरुद्गण मरुत्वानिन्द्र। छन्द - त्रिष्टुप्।

प्रति व एना नमसाहमेमि सूक्तेन भिक्षे सुमतिं तुराणाम्।
रराणता मरुतो वेद्याभिर्नि हेडो धत्त वि मुचध्वमश्वान् ॥१॥

हे मरुत्गण ! हामी स्तुति गाउँदै विनयपूर्वक झुकेर तिम्रा नजिक आएका छौँ। तेज गतिले जाने तिमी वीरहरूसित हामी परामर्श माग्दछौँ। ज्ञानवर्धक स्तुतिले हर्षित भएर जुनसुकै खालका विद्वेष बिर्सिएर घोडा मुक्त गरिदेओ।

एष वः स्तोमो मरुतो नमस्वान्हृदा तष्टो मनसा धायि देवाः।
उपेमा यात मनसा जुषाणा यूयं हि ष्ठा नमस इद्वृधासः ॥२॥

हे वीर मरुत्गण ! विनम्र भाव तथा एकाग्र मनले रचित स्तोत्र ध्यानपूर्वक सुन। हे दिव्य वीरहरू हो ! हाम्रा स्तोत्रले हृदयदेखि नै प्रशंसा गरेको छ। तिमीहरू हाम्रा नजिकै आओ। तिमीहरू नै यस हव्यलाई बढाउने हौ।

स्तुतासो नो मरुतो मृडयन्तूत स्तुतो मघवा शम्भविष्ठः।
ऊर्ध्वा नः सन्तु कोम्या वनान्यहानि विश्वा मरुतो जिगीषा ॥३॥

स्तुतिबाट प्रशंसित भएका मरुत्गणले हाम्रा लागि सुखसौभाग्य प्रदान गरुन्। उसै गरी सबैका सुखदायक वैभवशाली इन्द्रदेव पनि स्तुतिबाट प्रसन्न भएर हामीलाई सुखी गराऊन्। हे मरुत्गण ! हाम्रो बाँकी जीवन प्रशंसनीय, सुन्दर र योग्य बनोस्।

अस्मादहं तविषादीषमाण इन्द्राद्भिया मरुतो रेजमानः।
युष्मभ्यं हव्या निशितान्यासन्तान्यारे चकृमा मृडता नः ॥४॥

हे मरुत्गण ! शक्तिशाली इन्द्रदेवका डरले हामी थर्कमान हुँदै काँप्दछौँ। आहुति तयार गरेर तिमीहरूका लागि एकातिर राखिएको छ। त्यसले हामीलाई सुखी बनाओ।

येन मानासश्चितयन्त उस्रा व्युष्टिषु शवसा शश्वतीनाम्।
स नो मरुद्भिर्वृषभ श्रवो धा उग्र उग्रेभिः स्थविरः सहोदाः ॥५॥

हे इन्द्रदेव ! तिम्रा सामर्थ्यबाट प्रेरित भएर उषाका किरण नित्य प्रकट हुन्छ र सर्वत्र प्रकाश फैलाउँछ। हे सामर्थ्यवान् इन्द्रदेव ! पराक्रमीहरूमा सर्वश्रेष्ठ, शूरवीर र बलप्रदायक तिमी मरुत्हरूका सहयोगले हामीलाई अन्न प्रदान गर।

त्वं पाहीन्द्र सहीयसो नॄन्भवा मरुद्भिरवयातहेळाः।
सुप्रकेतेभिः सासहिर्दधानो विद्यामेषं वृजनं जीरदानुम् ॥६॥

हे इन्द्रदेव ! तिमी शत्रु संहार गर्ने नेतृत्व कर्ताहरूका संरक्षण गर्ने हौ। मरुत्का साथमा रहने तिमी क्रोधरहित पनि भइदेऊ। श्रेष्ठ तेजले सम्पन्न भएर शत्रुविनाशक सामर्थ्य तिमी धारण गर्दछौ। हामी अन्न र बल र दाताको वृत्ति स्वाभाविक रूपमा धारण गरौँ।

[सूक्त - १७२]

ऋषि – अगस्त्य मैत्रावरुणि। देवता – मरुद्गण। छन्द – गायत्री।

**चित्रो वोऽस्तु यामश्चित्र ऊती सुदानवः। मरुतो अहिभानवः ॥१॥**

हे दानवीर, अक्षय तेजसम्पन्न मरुत्गण ! तिम्रो गति आश्चर्यजनक छ। संरक्षण सामर्थ्य पनि विलक्षण छ।

**आरे सा वः सुदानवो मरुत ऋञ्जती शरुः। आरे अश्मा यमस्यथ ॥२॥**

हे श्रेष्ठ दानवीर मरुत्गण ! तीव्र वेगले, शत्रुका समूहमा तिमीहरूले फ्याँकेका शस्त्र हामीदेखि टाढा रहून्। तिमीहरू जुन वज्र शत्रुमाथि प्रहार गर्दछौ, त्यो पनि हामीदेखि टाढै रहोस्।

**तृणस्कन्दस्य नु विशः परिवृङ्क्त सुदानवः। ऊर्ध्वान्नः कर्त जीवसे ॥३॥**

हे श्रेष्ठ दानवीर मरुत्गण ! सिन्कोझैं सजिलै नाश हुने प्रजाहरूलाई पतनको मार्गबाट रोक। प्रजाको जीवनस्तर माथि उठाउँदै हामीलाई दीर्घायु प्रदान गर।

[सूक्त - १७३]

ऋषि – अगस्त्य मैत्रावरुणि। देवता – इन्द्र। छन्द – त्रिष्टुप् विराट्।

**गायत्साम नभन्यं१ यथा वेरर्चाम तद्वावृधानं स्वर्वत्।**
**गावो धेनवो बर्हिष्यदब्धा आ यत्सद्मानं दिव्यं विवासान् ॥१॥**

कामना पूर्ति गर्ने गाईले यज्ञमा विराजमान इन्द्रदेवलाई सेवा गर्दछन्। तिमी आफ्नो ज्ञानअनुसार हिंसक शत्रु विनाश गर्नका लागि सामगान गाओ। हामी यसै किसिमले इन्द्रदेवका लागि सुखदायी तथा उन्नतिशील सामगान गर्दछौं।

**अर्चद्वृषा वृषभिः स्वेदुहव्यैर्मृगो नाश्नो अति यज्जुगुर्यात्।**
**प्र मन्दयुर्मनां गूर्त होता भरते मर्यो मिथुना यजत्रः ॥२॥**

जुन वेला हवि सेवन गर्ने इच्छुक इन्द्रदेव सिंहजस्तै, आफ्नो भक्ष्यको कामना गर्दछन्, त्यस अवसरमा तेजस्वी ऋत्विकहरू सामर्थ्यवर्धक आफ्नो हविष्यान्न इन्द्रदेवलाई समर्पित गर्दछन्। हे पुरुषार्थी इन्द्रदेव ! हविदाता, यज्ञकर्ता, होता र स्तोता यी सबैले एकैसाथ मन्त्र उच्चारण गर्दै तिम्रा लागि हव्य पदार्थ प्रदान गर्दछन्।

**नक्षद्धोता परि सद्म मिता यन्भरद्गर्भमा शरदः पृथिव्याः।**
**क्रन्ददश्वो नयमानो रुवद्गौरन्तर्दूतो न रोदसी चरद्वाक् ॥३॥**

होताका रूपमा रहेका इन्द्रदेव गतिशील भएर सर्वत्र परिव्याप्त हुन्छन् र शरद् ऋतुभन्दा पहिले नै पृथ्वीका भित्री भागमा जल भराइदिन्छन्। इन्द्रदेवलाई आउँदै देखेर अश्व र गाई आआफ्ना स्वरमा कराउँछन्। इन्द्रदेव द्युलोक र भूलोकका बीचमा दूतझैं घुम्छन्।

**ता कर्माषतरास्मै प्र च्यौत्नानि देवयन्तो भरन्ते।**
**जुजोषदिन्द्रो दस्मवर्चा नासत्येव सुग्म्यो रथेष्ठाः ॥४॥**

देवताका उपासक ऋत्विक्हरूबाट शत्रुसंहारक इन्द्रदेवका लागि हवि अर्पित गरिन्छ। राम्रोसँग तयार पारिएको त्यही हवि नै तिमीहरूका लागि हामी अर्पण गर्दछौं। हेर्नमा राम्रा, रथमा चढेकाले तेजयुक्त, उत्तम गति भएका अश्विनीकुमारजस्ता इन्द्रदेव हामीले प्रदान गरेको आहुति स्वीकार गरुन्।

**तमु ष्टुहीन्द्रं यो ह सत्वा यः शूरो मघवा यो रथेष्ठाः।**
**प्रतीचश्चिद्योधीयान्वृषण्वानववव्रुषश्चित्तमसो विहन्ता ॥५॥**

हे मानिसहरू हो ! शत्रुसंहारक, शूरवीर, ऐश्वर्यसम्पन्न, उत्तम सारथी, असङ्ख्य विरोधीसित निर्भीकतापूर्वक युद्ध गर्ने, प्रचुर सामर्थ्यले युक्त र अज्ञानरूपी अन्धकार नाश गर्ने उनै इन्द्रदेवको अर्चना गर।

**प्र यदित्था महिना नृभ्यो अस्त्यरं रोदसी कक्ष्ये३ नास्मै।**
**सं विव्य इन्द्रो वृजनं न भूमा भर्ति स्वधावाँ ओपशमिव द्याम् ॥६॥**

आफ्नो महिमाले गर्दा इन्द्रदेव मानिसका अधिपति हुन्, कक्षजस्ता आकाश र पृथिवी यी दुवै लोक उनका लागि पर्याप्त छैनन्। इन्द्रदेवले पृथ्वीलाई कपालजस्तै र गोरुको सिङजस्तै पारेर द्युलोक ग्रहण गरिरहेका छन्।

समत्सु त्वा शूर सतामुराणं प्रपथिन्तमं परितंसयध्यै।
सजोषस इन्द्रं मदे क्षोणीः सूरिं चिद्ये अनुमदन्ति वाजैः ॥७॥

आनन्दमा उत्साही बनेका वीरले मरुत्‌हरूका साथै ज्ञानसम्पन्न इन्द्रदेवलाई अन्नद्वारा प्रसन्न गर्दछन्। हे वीर इन्द्रदेव ! उनीहरू तिमीलाई सबैभन्दा उत्तम र योग्य मार्गदर्शक ठानेर नै युद्धभूमिमा पनि अग्र स्थान प्रदान गर्दछन्।

एवा हि ते शं सवना समुद्र आपो यत्त आसु मदन्ति देवीः।
विश्वा ते अनु जोष्या भूद्गौः सूरींश्चिद्यदि धिषा वेषि जनान् ॥८॥

समस्त भूक्षेत्र र समुद्रमा जलको वर्षा गराउने आशा गर्दै इन्द्रदेवको स्तुतिका साथ ज्ञानीहरू आनन्ददायक यज्ञ गर्दछन्। ज्ञानी मानिसले भावनापूर्वक प्रार्थना गरेपछि हर्षित भएका इन्द्रदेव उनीहरूले रुचाएको फल प्रदान गर्दछन्।

असाम यथा सुषखाय एन स्वभिष्टयो नरां न शंसैः।
असद्यथा न इन्द्रो वन्दनेष्ठास्तुरो न कर्म नयमान उक्था ॥९॥

हे स्वामी इन्द्रदेव ! जस्तो व्यवहारले हाम्रो मित्रता तिमीसित रहन्छ, त्यस्तै व्यवहार हामीसित गर। हाम्रा स्तोत्रगान तिमीबाट लक्षित साधन पूर्ति गराउन सक्ने होस्। तिमी हाम्रो प्रार्थना सुनेर चाँडै नै हामीलाई कर्तव्य निर्वाह गर्नका लागि शक्ति प्रदान गर।

विष्पर्धसो नरां न शंसैरस्माकासदिन्द्रो वज्रहस्तः।
मित्रायुवो न पूर्पतिं सुशिष्टौ मध्यायुव उप शिक्षन्ति यज्ञैः ॥१०॥

याज्ञिकहरूले झैं स्तोताहरूले पनि वज्रधारी इन्द्रदेवको मित्रता प्राप्त होस् भनेर प्रतिस्पर्धी भावनाले प्रशंसक वाणीद्वारा उनको स्तुति गर्दछन्। मध्यस्थ व्यक्तिहरू मित्रताको कामनाले शिष्टाचार पूरा गर्दै कोसेली दिएझैं राष्ट्रका रक्षक इन्द्रदेवलाई यज्ञबाट दानस्वरूप हविष्यान्न अर्पित गर्दछन्।

यज्ञो हि ष्मेन्द्रं कश्चिदृन्धञ्जुहुराणश्चिन्मनसा परियन्।
तीर्थे नाच्छा तातृषाणमोको दीर्घो न सिध्रमा कृणोत्यध्वा ॥११॥

प्रत्येक यज्ञीय कर्मले इन्द्रदेवलाई उन्नति गराउँछन्। दुर्भावजन्य कुटिलताले गरिएका यज्ञबाट इन्द्रदेव प्रसन्न हुँदैनन्। तिर्खाएका तीर्थयात्रीलाई नजिकैका जलले तुष्टि दिएझैं उपयुक्त किसिमका यज्ञले इन्द्रदेवलाई प्रसन्नता प्रदान गर्दछ। लामो बाटाका थकाइले दुःख दिएझैं कुटिलतापूर्ण यज्ञले कुटिल फल नै प्रदान गर्दछ।

मो षू ण इन्द्रात्र पृत्सु देवैरस्ति हि ष्मा ते शुष्मिन्नवयाः।
महश्चिद्यस्य मीळ्हुषो यव्या हविष्मतो मरुतो वन्दते गीः ॥१२॥

हे इन्द्रदेव ! युद्धमा तिमी हाम्रो पनि साथ नछोड। हे बलशाली इन्द्रदेव ! तिम्रा लागि यज्ञको भाग प्रस्तुत छ। हामीलाई सुख दिने र प्रतिफल पाइने स्तुतिले अन्न र जल प्रदान गर्ने मरुत्‌हरूको पनि वन्दना गर्दछन्।

एष स्तोम इन्द्र तुभ्यमस्मे एतेन गातुं हरिवो विदो नः।
आ नो ववृत्याः सुविताय देव विद्यामेषं वृजनं जीरदानुम् ॥१३॥

हे अश्वले सम्पन्न देवताका रूपमा रहेका इन्द्रदेव ! हाम्रा स्तुति तिम्रै निमित्त हो। हाम्रा यज्ञको उद्देश्य बुझ। हामीलाई कल्याणकारी धनसम्पत्ति प्रदान गर। त्यसबाट हामी अन्न, बल र विजयश्री प्रदान गर्ने सैनिक प्राप्त गर्न सकौं।

[सूक्त - १७४]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

त्वं राजेन्द्र ये च देवा रक्षा नॄन्पाह्यसुर त्वमस्मान्।
त्वं सत्पतिर्मघवा नस्तरुत्रस्त्वं सत्यो वसवानः सहोदाः ॥१॥

हे सामर्थ्यशाली इन्द्रदेव ! तिमी संसारका अधिपति हौ। देवशक्तिका सहयोगले तिमी मानिसको रक्षा गर। तिमी सत्कर्मशील मानिसका पालक हौ। हामीजस्ता वीरलाई रक्षा गर। तिमी ऐश्वर्यवान् र हामीलाई पार लगाउने हौ। तिमी नै भरोसिलो आश्रयदाता र बलदाता हौ।

दनो विश इन्द्र मृध्रवाचः सप्त यत्पुरः शर्म शारदीर्दर्त्।
ऋणोरपो अनवद्यार्णा यूने वृत्रं पुरुकुत्साय रन्धीः ॥२॥

हे इन्द्रदेव ! तिमीले शरद्कालीन निवासयोग्य शत्रुका सहरमा भएका सात वटा भवन नष्ट गरेकै बेला कटुभाषी शत्रु पक्षका सैनिकलाई पनि नष्ट गर्‍यौ। हे अनिन्दनीय इन्द्रदेव ! तिमीले पानीको धारालाई बग्नका लागि खोलिदियौ र पुरुकुत्स नामका युवकका लागि वृत्रासुरको संहार गर्‍यौ।

अजा वृत इन्द्र शूरपत्नीर्द्यां च येभिः पुरुहूत नूनम्।
रक्षो अग्निमशुषं तूर्वयाणं सिंहो न दमे अपांसि वस्तोः ॥३॥

आह्वान गर्न योग्य हे इन्द्रदेव ! जुन मरुत्‌गणका साथमा तिमी निश्चित रूपमा दिव्य लोकमा जान्छौ, उनीहरूकै सहयोगले वीरलाई सुरक्षित गरेर शत्रुको अभेद्य पर्खाल भत्काउँछौ। हे इन्द्रदेव ! हाम्रा घरमा जल पूरा गर्नका लागि सिंहजत्तिकै पराक्रमी आफ्ना सामर्थ्यले रोगनाशक तीव्र गतिशील अग्निलाई संरक्षित गर।

शेषन्नु त इन्द्र सस्मिन्योनौ प्रशस्तये पवीरवस्य मह्ना।
सृजदर्णास्यव यद्युधा गास्तिष्ठद्धरी धृषता मृष्ट वाजान् ॥४॥

हे इन्द्रदेव ! तिमीलाई महिमासम्पन्न गराउनका लागि वज्रका प्रहारले युद्धभूमिमा असुर धराशायी भएर ढले। जुन समयमा तिमी योद्धा शत्रुका नजिक गएर उनीहरूले थुनेको जलप्रवाहलाई बगायौ, उसै बेला तिमीहरू दुवै घोडामा आरूढ भयौ। आआफ्ना घर्षणशील र शत्रुसंहारक सामर्थ्यले वीर सैनिकलाई दोषमुक्त गरायौ।

वह कुत्समिन्द्र यस्मिञ्चाकन्त्स्यूमन्यू ऋज्रा वातस्याश्वा।
प्र सूरश्चक्रं वृहतादभीकेऽभि स्पृधो यासिषद्वज्रबाहुः ॥५॥

हे इन्द्रदेव ! तिमी कुत्सका यज्ञमा हवि सेवन गर्न रुचाउँछौ। सुखदायी र सोझो मार्गमा हिंड्न वायुसमान गतिमान् अश्व तिमी धपाऊ। युद्धमा सूर्यदेवले आफ्नो चक्र उनका नजिक लैजाऊन् र हातमा वज्र धारण गर्ने इन्द्रदेव शत्रु सेनातर्फ उन्मुख होऊन्।

जघन्वाँ इन्द्र मित्रेरूञ्चोदप्रवृद्धो हरिवो अदाशून्।
प्र ये पश्यन्नर्यमणं सचायोस्त्वया शूर्ता वहमाना अपत्यम् ॥६॥

हे अश्वयुक्त इन्द्रदेव ! तिमीले अति उत्साहपूर्वक मित्रका शत्रु यज्ञकर्मरहित दुष्टको संहार गर्‍यौ। तिमीलाई जसले अन्न दान गरेर सन्तुष्ट गर्दछन्, उनीहरूलाई तिमी सन्तान र वीरता प्रदान गर्दछौ।

रपत्कविरिन्द्रार्कसातौ क्षां दासायोपबर्हणीं कः।
करत्तिस्रो मघवा दानुचित्रा नि दुर्योणे कुयवाचं मृधि श्रेत् ॥७॥

हे इन्द्रदेव ! ऋषिहरूले स्तुति गाउने बेलामा तिम्रा लागि प्रशंसक वाणी प्रयोग गरे। अनि तिमीले शत्रु संहार गरेर उनीहरूलाई पृथ्वीरूपी शय्यामा सुताइदियौ। ऐश्वर्यवान् इन्द्रले तीन भूमिलाई उत्तम अन्न, ऐश्वर्य र सुखदायी पदार्थले सुशोभित गरे। दुर्योणिका लागि युद्धमा तिमीले कुयवाच राक्षसको संहार गर्‍यौ।

सना ता त इन्द्र नव्या आगुः सहो नभोऽविरणाय पूर्वीः।
भिनत्पुरो न भिदो अदेवीर्ननमो वधरदेवस्य पीयोः ॥८॥

हे इन्द्रदेव ! तिम्रो शाश्वत स्तोत्ररूपी वाणी ऋषिहरूले फेरि पनि गाए। तिमीले युद्ध रोक्नका लागि आसुरी शक्तिलाई दमन गर्‍यौ र शत्रुका किल्ला भत्काएझैं असुरताको अभेद्य शक्ति आफ्ना सामर्थ्यले छिन्नभिन्न गरायौ। हिंसक शत्रुका शस्त्रबलको धार पनि तिमीले भुत्याइदियौ।

त्वं धुनिरिन्द्र धुनिमतीर्ऋणोरपः सीरा न स्रवन्तीः।
प्र यत्समुद्रमति शूर पर्षि पारया तुर्वशं यदुं स्वस्ति ॥९॥

हे इन्द्रदेव ! तिमी शत्रुलाई आफ्ना सामर्थ्यले भयभीत गराउँछौ। प्रवाहित नदीजस्तो जलको अथाह भण्डार तिमीले खोलिदियौ। हे पराक्रमी वीर इन्द्रदेव ! तिमी समुद्रलाई जलले परिपूर्ण गराउँछौ। तिमी तुर्वश र यदुलाई दक्षतापूर्वक पारि तारिदिन्छौ।

त्वमस्माकमिन्द्र विश्वध स्या अवृकतमो नरां नृपाता।
स नो विश्वासां स्पृधां सहोदा विद्यामेषं वृजनं जीरदानुम् ॥१०॥

हे इन्द्रदेव ! तिमी सधैं हाम्रा निष्कपट प्रजाका संरक्षक हौ। हाम्रा सम्पूर्ण सैन्य शक्तिको प्रभाव क्षमता बढाइदेऊ। त्यसले हामीलाई अन्न, बल र दीर्घायु लाभ हुन सकोस्।

[सूक्त - १७५]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - इन्द्र। छन्द - स्कन्धोग्रीवी बृहती अनुष्टुप्।

**मत्स्यपायि ते महः पात्रस्येव हरिवो मत्सरो मदः।**
**वृषा ते वृष्ण इन्दुर्वाजी सहस्रसातमः ॥१॥**

हे अश्वधारक इन्द्रदेव ! विशाल भाँडोजस्ता तिमी महान् छौ। आनन्ददायक, हर्षवर्धक, शक्तिशाली, असङ्ख्य दान गर्ने तिमी सोमरस पान गर्दै आनन्दको अनुभव गर।

**आ नस्ते गन्तुमत्सरो वृषा मदो वरेण्यः।**
**सहावाँ इन्द्र सानसिः पृतनाषाडमर्त्यः ॥२॥**

हे इन्द्रदेव ! तिम्रा लागि तयार गरिएको बलवर्धक, हर्षदायक, असल, सामर्थ्ययुक्त, पान गर्न योग्य, अविनाशी, शत्रुविजेता, आनन्ददायी सोमरस तिमीलाई प्राप्त होस्।

**त्वं हि शूरः सनिता चोदयो मनुषो रथम्।**
**सहावान्दस्युमव्रतमोषः पात्रं न शोचिषा ॥३॥**

हे इन्द्रदेव ! तिमी वीर र अन्नदाता हौ। मानिसको इच्छा राम्रो दिशामा प्रेरित गर। अग्निका ज्वालाले भाँडो तताएझैं तिमी सहायक बनेर मर्यादाहीन दुष्टलाई नष्ट गर।

**मुषाय सूर्यं कवे चक्रमीशान ओजसा। वह शुष्णाय वधं कुत्सं वातस्याश्वैः ॥**

हे मेधावी इन्द्रदेव ! तिमी सबैका स्वामी हौ। ऐश्वर्य प्राप्तिका लागि तिमीले आपना सामर्थ्य शक्तिले सूर्यदेवबाट चक्र प्राप्त गऱ्यौ। शुष्णलाई संहार गर्नका लागि वायुझैं वेग भएका अश्वमा बस र शत्रुमाथि प्रहार गर्ने वज्र लिएर कुत्सका नजिकै पुऱ्याऊ।

**शुष्मिन्तमो हि ते मदो द्युम्निन्तम उत क्रतुः।**
**वृत्रघ्ना वरिवोविदा मंसीष्ठा अश्वसातमः ॥५॥**

हे इन्द्रदेव ! तिम्रो प्रसन्नता सबैलाई शक्ति दिने खालको छ। तिम्रो असल कर्म मनग्गे अन्न प्रदान गर्ने खालको छ। तिमी अश्व दान गर्नमा प्रख्यात छौ। हामीलाई वृत्रवध गर्ने अस्त्र र ऐश्वर्य सम्पदा प्रदान गर।

**यथा पूर्वेभ्यो जरितृभ्य इन्द्र मयइवापो न तृष्यते बभूथ।**
**तामनु त्वा निविदं जोहवीमि विद्यामेषं वृजनं जीरदानुम् ॥६॥**

हे इन्द्रदेव ! तिर्खाएकाहरूले पानी र दुःखीहरूले सुख प्राप्त गरेझैं तिमी उहिलेका स्तोताहरूलाई आनन्ददाता र प्रिय सिद्ध भएका छौ। सनातनी स्तुतिले हामी तिमीलाई आमन्त्रित गर्दछौं। त्यसबाटै हामी अन्न, बल र दीर्घायु प्राप्त गरौं।

[सूक्त - १७६]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - इन्द्र। छन्द - अनुष्टुप् त्रिष्टुप्।

**मत्सि नो वस्यइष्टय इन्द्रमिन्दो वृषा विश।**
**ऋघायमाण इन्वसि शत्रुमन्ति न विन्दसि ॥१॥**

हे इन्द्रदेव ! ऐश्वर्य सम्पदा प्राप्त गराएर हामीलाई तिमी आनन्दित गर। हे बलदायक सोम ! तिमी इन्द्रदेवमा प्रविष्ट होऊ। शत्रुको संहार गर्दै देवशक्तिभित्र तिमी व्याप्त भइदेऊ र विकाररूपी शत्रुहरूलाई हाम्रा नजिक आउन नदेऊ।

**तस्मिन्ना वेशया गिरो य एकश्चर्षणीनाम्।**
**अनु स्वधा यमुप्यते यवं न चर्कृषद्वृषा ॥२॥**

सम्पूर्ण प्रजाका एकमात्र अधीश्वरका रूपमा रहेका, सबैबाट हविष्यान्न अर्पण गरिने, अति शक्तिशाली, किसानले जौंको बाली काटेझैं शत्रु समाप्त गर्ने इन्द्रदेवलाई तिमीहरू सबैले स्तुतिसहित अर्चना गर।

**यस्य विश्वानि हस्तयोः पञ्च क्षितीनां वसु।**
**स्पाशयस्व यो अस्मध्रुग्दिव्येवाशनिर्जहि ॥३॥**

हे इन्द्रदेव ! तिम्रा हातमा प्रजाका पाँच प्रकारको वैभव सम्पदा छ। तिमी हाम्रा विरोधी परास्त गरिदेऊ र आकाशबाट खस्ने चट्याङले झैं तिनीहरूलाई विनाश गरिदेऊ।

असुन्वन्तं समं जहि दूणाशं यो न ते मयः।
अस्मभ्यमस्य वेदनं दद्धि सूरिश्चिदोहते ॥४॥

हे इन्द्रदेव ! सोम तयार नगर्ने, यज्ञकर्मविहीन, दुष्कर्मी, अनियन्त्रित दुष्टलाई तिमी नाश गर र उनीहरूको धनसम्पत्ति हामीलाई प्रदान गर।

आवो यस्य द्विबर्हसोऽर्केषु सानुषगसत्।
आजाविन्द्रस्येन्दो प्रावो वाजेषु वाजिनम् ॥५॥

स्तोत्र उच्चारण गर्ने बेलामा सधैं उपस्थित रहेर तिमीले दुई किसिमका यज्ञ सम्पन्न गर्ने यजमानलाई रक्षा गरेका छौ। हे सोम ! उसै गरी तिमी र इन्द्रदेव युद्धमा र ऐश्वर्य प्राप्त गर्ने समयमा यजमानलाई पनि रक्षा गर।

यथा पूर्वेभ्यो जरितृभ्य इन्द्र मयइवापो न तृष्यते बभूथ।
तामनु त्वा निविदं जोहवीमि विद्यामेषं वृजनं जीरदानुम् ॥६॥

हे इन्द्रदेव ! तिर्खाएकालाई जल र दुःखीलाई सुख प्राप्त गराएझैं गरी पहिलेदेखिका स्तोताहरूका लागि आनन्ददायक र प्रीतियुक्त बन्यौ। तिम्रा तिनै पुराना स्तुतिले हामी तिमीलाई आमन्त्रित गर्दछौं। तिम्रा कृपाले हामी अन्न, बल र लामो आयु प्राप्त गरौं।

[सूक्त - १७७]

ऋषि – अगस्त्य मैत्रावरुणि। देवता – इन्द्र। छन्द – त्रिष्टुप्।

आ चर्षणिप्रा वृषभो जनानां राजा कृष्टीनां पुरुहूत इन्द्रः।
स्तुतः श्रवस्यन्नवसोप मद्रिग्युक्त्वा हरी वृषणा याह्यर्वाङ् ॥१॥

हे इन्द्रदेव ! तिमी प्रजाहरूका पालक, शक्तिशाली मानिसका अधिपति र धेरैबाट बोलाइने हौ। तिमी स्तुतिबाट प्रशंसित भएर हाम्रा सोमयज्ञको कामना गर्दै संरक्षण साधनका साथ बलिया अश्व रथमा नारेर हामीकहाँ आऊ।

ये ते वृषणो वृषभास इन्द्र ब्रह्मयुजो वृषरथासो अत्याः।
ताँ आ तिष्ठ तेभिरा याह्यर्वाङ् हवामहे त्वा सुत इन्द्र सोमे ॥२॥

हे इन्द्रदेव ! तिमीसित बलिया, शक्तिसम्पन्न र सङ्केत मात्रैले रथमा नारिने घोडा छन्। तिनैलाई रथमा नारेर, त्यसै रथमा बसेर हामीसित आऊ। हे इन्द्रदेव ! हामी सोमरस पस्कने बेलामा तिमीलाई आह्वान गर्दछौं।

आ तिष्ठ रथं वृषणं वृषा ते सुतः सोमः परिषिक्ता मधूनि।
युक्त्वा वृषभ्यां वृषभ क्षितीनां हरिभ्यां याहि प्रवतोप मद्रिक् ॥३॥

हे इन्द्रदेव ! तिमी दह्रो रथमा विराजमान छौ। तिम्रा लागि शक्तिवर्धक सोमरस पेलेर तयार गरिएको छ। त्यसमा मिठो खाने कुरो मिसाइएको छ। हे शक्तिशाली इन्द्रदेव ! तिमी बलियो अश्व विशेष गतिसम्पन्न रथमा नारेर आफ्ना प्रजाका नजिकै जाऊ।

अयं यज्ञो देवया अयं मियेध इमा ब्रह्माण्ययमिन्द्र सोमः।
स्तीर्णं बर्हिरा तु शक्र प्र याहि पिबा निषद्य वि मुचा हरी इह ॥४॥

हे इन्द्रदेव ! देवताहरूलाई प्राप्त हुने यो यज्ञ दुधालु प्राणी, स्तोत्र र सोमरस तिम्रै लागि हो। तिम्रा लागि यो आसन राखिएको छ। हे सामर्थ्यवान् इन्द्रदेव ! तिमी नजिकै आऊ र आसनमा बसेर सोमपान गर। यहीं आफ्ना रथमा बाँधिएको घोडा खोल।

ओ सुष्टुत इन्द्र याह्यर्वाङुप ब्रह्माणि मान्यस्य कारोः।
विद्याम वस्तोरवसा गृणन्तो विद्यामेषं वृजनं जीरदानुम् ॥५॥

हे इन्द्रदेव ! अति मिहिनेतसँग स्तुति गरिने तिमी सम्माननीय स्तोताको स्तुति सुनेर हाम्रा नजिक आयौ। हामी नित्य तिम्रा संरक्षणले तिम्रो प्रशंसा गर्दै धनसम्पदा प्राप्त गरेर अन्न, बल र विजयश्री प्राप्त गरौं।

[सूक्त - १७८]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**यद्ध स्या त इन्द्र श्रुष्टिरस्ति यया बभूथ जरितृभ्य ऊती।**
**मा नः कामं महयन्तमा धग्विश्वा ते अश्यां पर्याप आयोः ॥१॥**

हे इन्द्रदेव ! जुन धनले तिमी स्तोतालाई संरक्षण गर्दछौ, त्यो हामीलाई प्रदान गर। हाम्रो असल कामना नरोकीकन तिमी हाम्रा लागि उपयोगी ऐश्वर्य हामीलाई प्रदान गर।

**न घा राजेन्द्र आ दभन्नो या नु स्वसारा कृणवन्त योनौ।**
**आपश्चिदस्मै सुतुका अवेषन्गमन्न इन्द्रः सख्या वयश्च ॥२॥**

हाम्रा औंलाले यज्ञका जेजति काम यज्ञस्थलमा गरेका छन्, तेजस्वी इन्द्रदेवले ती नष्ट नगरिदिऊन्। यस्तो कार्य सम्पादनका लागि शुद्ध जल प्राप्त होस्। इन्द्रदेवले हाम्रा लागि मैत्रीभाव र पोषक उत्तम अन्न प्रदान गरुन्।

**जेता नृभिरिन्द्रः पृत्सु शूरः श्रोता हवं नाधमानस्य कारोः।**
**प्रभर्ता रथं दाशुष उपाक उद्यन्ता गिरो यदि च त्मना भूत् ॥३॥**

शूरवीर इन्द्रदेव युद्धमा सैन्यशक्तिका सहयोगले ऐश्वर्यविजेता, विपद्ग्रस्त स्तोताको करुण पुकार सुन्ने, दानी यजमानका नजिकै रथ अड्याउने, र श्रद्धाभावले प्रार्थना गर्ने साधकका वाणीरूपी साधनालाई उकास्ने खालका छन्।

**एवा नृभिरिन्द्रः सुश्रवस्या प्रखादः पृक्षो अभि मित्रिणो भूत्।**
**समर्य इषः स्तवते विवाचि सत्राकरो यजमानस्य शंसः ॥४॥**

ठूलो यश कमाएका इन्द्रदेव मानिससँग मित्रतापूर्ण व्यवहार गर्ने यजमानको मात्रै हवि ग्रहण गर्दछन्। इन्द्रदेव स्तोताको प्रार्थना पूर्ण गराउने र यजमानका शुभचिन्तक हुन्। जहाँ अनेकौं स्तोता परस्पर मिलेर आह्वान गर्छन्, त्यस्ता युद्धमा आफ्ना मित्रहरूको सुरक्षा गर्दछन्।

**त्वया वयं मघवन्निन्द्र शत्रूनभि ष्याम महतो मन्यमानान्।**
**त्वं त्राता त्वमु नो वृधे भूर्विद्यामेषं वृजनं जीरदानुम् ॥५॥**

हे ऐश्वर्यशाली इन्द्रदेव ! हामी तिम्रा सहयोगले ठूला अहङ्कारी शत्रु पनि पराजित गरौं। तिमी नै हाम्रा संरक्षक र प्रगतिका कारण भइदेऊ। त्यसैबाट हामी अन्न, बल र लामो आयु प्राप्त गरौं।

[सूक्त - १७९]

ऋषि - लोपामुद्रा अगस्त्य मैत्रावरुण ब्रह्मचारी। देवता - रति। छन्द - त्रिष्टुप् बृहती।

**पूर्वीरहं शरदः शश्रमाणा दोषा वस्तोरुषसो जरयन्तीः।**
**मिनाति श्रियं जरिमा तनूनामप्यू नु पत्नीर्वृषणो जगम्युः ॥१॥**

हे इन्द्रदेव ! हामी विगतका अनेकौं वर्षदेखि उषाकाल, रात र दिनमा निरन्तर परिश्रम गर्न लागेका छौं। बुढ्यौलीले शरीरको क्षमता क्षीण गराउँछ। पत्नीसँग समर्थ पुरुष मात्रै जाऊन्।

**ये चिद्धि पूर्व ऋतसाप आसन्त्साकं देवेभिरवदन्नृतानि।**
**ते चिदवासुर्नह्यन्तमापुः समू नु पत्नीर्वृषभिर्जगम्युः ॥२॥**

उहिले ऋषिको स्तरमा पुगेर सत्यसाधनामा लागेका र देवताहरूसँग साँचो सत्य बोल्ने मानिस जेजति थिए, तिनीहरूले पनि सन्तान उत्पादन गरेका थिए। उनीहरू अन्त्यसम्म ब्रह्मचर्य आश्रममा रहेनन्। त्यस्तै अति समर्थ पुरुषलाई पत्नी उपलब्ध होऊन्।

**न मृषा श्रान्तं यदवन्ति देवा विश्वा इत्स्पृधो अभ्यश्नवाव।**
**जयावेदत्र शतनीथमाजिं यत्सम्यञ्चा मिथुनावभ्यजाव ॥३॥**

हाम्रो तपस्या खेर गएन। असल चरित्रका कारण देवताहरूले हामीलाई रक्षा गर्दछन्। हामीले विश्वका सबै प्रतिस्पर्धा जितेका छौं। हामी दम्पतीले यदि उचित तरिकाले सन्तान उत्पादन गर्दछौं भने यस जीवनमा सय वटा सङ्ग्राममा विजयी हुनेछौं।

**नदस्य मा रुधतः काम आगन्नित आजातो अमुतः कुतश्चित्।**
**लोपामुद्रा वृषणं नी रिणाति धीरमधीरा धयति श्वसन्तम् ॥४॥**

नदीको प्रवाह सबै तिरबाट रोक्ने, संयमबाट उत्पन्न शक्तिलाई लोपामुद्रा सन्तान प्राप्तिका कामनाले प्रेरित गर्दछिन्। यो, त्यो अथवा अन्य कुनै कारणले यस्तो भाव अधिक बढ्दछ। श्वास संयम गर्न सक्ने धीर पुरुषले अधीरतालाई नियन्त्रण गर्दछन्।

इमं नु सोममन्तितो हृत्सु पीतमुप ब्रुवे।
यत्सीमागश्चकृमा तत्सु मृडतु पुलुकामो हि मर्त्यः ॥५॥

सोमका नजिकै गएका मानिस भावनापूर्वक त्यो पान गर्छन् र आफ्ना अनेकौं रहर सोमसित प्रकट गर्दछन्। त्यस्ता बेलामा हाम्रा मनमा विकार आयो भने त्यसै सोमका प्रभावले ती भावना दोषबाट मुक्त र शुद्ध गराओस्।

अगस्त्यः खनमानः खनित्रैः प्रजामपत्यं बलमिच्छमानः।
उभौ वर्णावृषिरुग्रः पुपोष सत्या देवेष्वाशिषो जगाम ॥६॥

कठोर तपस्वी अगस्त्यले खन्तीले खनेकै भरमा प्रजाको उन्नति गर्ने र शक्ति आर्जन गर्ने दुई वर्णका मानिसलाई पालनपोषण गरे र देवताहरूको असल आशीर्वाद पाए।

[सूक्त – १८०]

**ऋषि** – अगस्त्य मैत्रावरुणि। **देवता** – अश्विनीकुमार। **छन्द** – त्रिष्टुप्।

युवो रजांसि सुयमासो अश्वा रथो यद्वां पर्यर्णांसि दीयत्।
हिरण्यया वांपवयः प्रुषायन्मध्वः पिबन्ता उषसः सचेथे ॥१॥

हे अश्विनीकुमारहरू हो! तिमीहरूको रथ समुद्र वा अन्तरिक्षमा रहेका बेला रथ तान्ने अश्व नामको गतिसाधन पनि अन्तरिक्ष मार्गमा नियमअनुसार गतिशील रहन्छ। रथका स्वर्णिम दीप्तियुक्त पाङ्ग्रा पनि बादल समूहका पानीले भिज्न थाल्छन्। तिमीहरू दुवै स्वादिलो सोमरस पान गरेर बिहानीपख एकत्र भएर हिँड्छौ।

युवमत्यस्याव नक्षथो यद्विपत्मनो नर्यस्य प्रयज्योः।
स्वसा यद्वां विश्वगूर्ती भराति वाजायेट्टे मधुपाविषे च ॥२॥

सबैले रुचाउने स्वादिलो सोमरस पान गर्ने अश्विनीकुमारहरू हो! तिमीहरू दुवै निरन्तर गतिशील, आकाशमा विचरण गर्ने, लोककल्याणकारी, पूजनीय सूर्यदेवको आगमन हुनुभन्दा पहिले आउँछौ। त्यसपछि उषा बहिनीले तिमीहरूलाई सहयोग गर्दछिन् र यज्ञमा यजमानहरू बल र अन्न बढाउनका लागि तिमीहरू दुवैको प्रशंसा गर्दछन्।

युवं पय उस्रियायामधत्तं पक्वमामायामव पूर्व्यं गोः।
अन्तर्यद्वनिनो वामृतप्सू ह्वारो न शुचिर्यजते हविष्मान् ॥३॥

हे सत्यपालक अश्विनीकुमारहरू हो! तिमीहरू दुवैले गाईमा पोषणयुक्त दुध उत्पन्न गरायौ र थारा गाईमा पनि उत्पादनको सम्भाव्यता गरायौ। वनका सर्पजत्तिकै सचेत रहेर हविष्यान्न बटुल्ने यजमान तिमीहरू दुईका लागि दुधले यज्ञ गर्दछन्।

युवं ह घर्मं मधुमन्तमत्रयेऽपो न क्षोदोऽवृणीतमेषे।
तद्वां नरावश्विना पश्वइष्टी रथ्येव चक्रा प्रति यन्ति मध्वः ॥४॥

हे नेतृत्वशाली अश्विनीकुमारहरू हो! तिमीहरू दुवैले अत्रि ऋषिलाई सुखी बनाउनका लागि नै गर्मीलाई जलजस्तै शीतल, रमाइलो र सुखदायी बनायौ। त्यति बेला रथका नजिक पाङ्ग्रा रहेझैं तिमीहरूका नजिक यज्ञ र सोमरस पुगे।

आ वां दानाय ववृतीय दस्रा गोरोहेण तौग्र्यो न जिव्रिः।
अपः क्षोणी सचते माहिना वां जूर्णो वामक्षुरंहसो यजत्रा ॥५॥

हे शत्रुसंहारक एवं सम्मानित अश्विनीकुमारहरू हो! विजयको आशा लिएका तुग्रका पुत्र तिमीहरू दुवैको सहयोग पाउन प्रशंसक शब्दका साथ जोडले लागिपरे। तिमीहरूको महिमा सम्पूर्ण द्युलोक र पृथिवीमा त्यसै किसिमले व्याप्त छ। तिमीहरूको कृपा पाउँदा हामी अति वृद्ध भए पनि बुढ्यौलीका कष्टबाट मुक्त हुँदै लामो आयु पाऔं भनेर तिमीहरू दुवैको स्तुति गर्दछौं।

नि यद्युवेथे नियुतः सुदानू उप स्वधाभिः सृजथः पुरन्धिम्।
प्रेषद्वेषद्वातो न सूरिरा महे ददे सुव्रतो न वाजम् ॥६॥

हे दानवीर अश्विनीकुमारहरू हो! तिमीहरू दुवैले आफ्ना रथमा अश्व नारेपछि साधक भएका ठाउँमा असङ्ख्यको भरणपोषण गर्ने व्यवस्था, बुद्धि, अन्नसम्पदा उत्पन्न गर्दछौ। असल कार्य गर्ने मानिस यो महत्त्वपूर्ण दायित्व निर्वाह गर्नका लागि अन्न उपलब्ध गरेर हविष्यान्नलाई वायुझैं बनाएर तिमीहरूलाई सन्तुष्ट पार्दछन्।

वयं चिद्धि वां जरितारः सत्या विपन्यामहे वि पणिर्हितावान्।
अधा चिद्धि ष्माश्विनावनिन्द्या पाथो हि ष्मा वृषणावन्तिदेवम् ॥७॥

हे शक्तिसम्पन्न, अनिन्दनीय अश्विनीकुमारहरू हो ! हामी नै सच्चा साधक हौं, त्यसैले तिमीहरू दुवैका प्रख्यात गुणको वर्णन गर्दछौं। धन सङ्ग्रह गर्ने व्यापारीहरू यज्ञमा धन लगाउँदैनन्। उनीहरू त तिमीहरूजस्ता देवताले ग्रहण गर्ने सोमरस पान मात्रै गर्छन्।

युवां चिद्धि ष्माश्विनावनु द्यून्विरुद्रस्य प्रस्रवणस्य सातौ।
अगस्त्यो नरां नृषु प्रशस्तः काराधुनीव चितयत्सहस्रैः ॥८॥

हे अश्विनीकुमारहरू हो ! मानिस र पथप्रदर्शकहरूमा ख्याति प्राप्त अगस्त्य ऋषि सधैंभरि विशिष्ट गर्जन गर्ने जल प्रवाह उपलब्ध गर्न कुशल बाँसुरी वादकजस्तो भएर तिमीहरू दुईलाई सुन्दर ध्वनियुक्त हजारौं धुनले प्रार्थना गर्दछन्।

प्र यद्वहेथे महिना रथस्य प्र स्पन्द्रा याथो मनुषो न होता।
धत्तं सूरिभ्य उत वा स्वश्व्यं नासत्या रयिषाचः स्याम ॥९॥

हे सत्यका पालक र गतिशील अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै आआफ्ना सर्वोत्तम रथमा आरूढ भएर वेगका साथ यज्ञकर्तासमक्ष मनुष्य लोकको यात्रा गर्दछौ। त्यसैले यस्ता उत्तम ज्ञानीलाई उचित असल अश्वसहित धनसम्पन्न गराओ र हामीलाई पनि ऐश्वर्य सम्पदाले परिपूर्ण गराओ।

तं वां रथं वयमद्या हुवेम स्तोमैरश्विना सुविताय नव्यम्।
अरिष्टनेमिं परि द्यामियानं विद्यामेषं वृजनं जीरदानुम् ॥१०॥

हे अश्विनीकुमारहरू हो ! हामीलाई आजै सुखको साधन प्राप्त होस् भनेर तिमीहरूलाई आह्वान गर्दछौं। द्युलोकका चारैतिर विचरण गर्ने, कहिल्यै विकृत नहुने धुरा भएको तिमीहरूको नयाँ रथ हाम्रा नजिकै आइपुगोस्। तिमीहरू हामीलाई अन्न, बल एवं दीर्घ जीवन प्रदान गर।

[सूक्त - १८१]

**ऋषि** - अगस्त्य मैत्रावरुणि। **देवता** - अश्विनीकुमार। **छन्द** - जगती; ६,८ त्रिष्टुप्।

कदु प्रेष्ठाविषां रयीणामध्वर्यन्ता यदुन्निनीथो अपाम्।
अयं वां यज्ञो अकृत प्रशस्तिं वसुधिती अवितारा जनानाम् ॥१॥

हे मनुष्यका संरक्षक हे अश्विनीकुमारहरू हो ! यस यज्ञमा तिमीहरूको प्रशंसा हुन्छ। यज्ञका लागि जल, अन्न र धनसम्पत्तिलाई प्रेरित गर्ने क्रम कहिले प्रारम्भ गर्दछौ ?

आ वामश्वासः शुचयः पयस्पा वातरंहसो दिव्यासो अत्याः।
मनोजुवो वृषणो वीतपृष्ठा एह स्वराजो अश्विना वहन्तु ॥२॥

हे अश्विनीकुमारहरू हो ! पवित्र, दिव्य, गतिशील, वायुसमान वेगवान्, दुधको आहार गर्ने तिमीहरू दुवैलाई मनझैं तीव्र गतिका, शक्तिशाली, उज्ज्वल पृष्ठ भएका र तेजले सम्पन्न, गुणले सुशोभित घोडाले हाम्रा यज्ञमा ल्याउन्।

आ वां रथोऽवनिर्न प्रवत्वान्त्सृप्रवन्धुरः सुविताय गम्याः।
वृष्णः स्थातारा मनसो जवीयानहम्पूर्वो यजतो धिष्ण्या यः ॥३॥

हे उच्च आसनमा प्रतिष्ठित, एकै स्थानमा स्थिर रहने अश्विनीकुमारहरू हो ! मनजस्तै गति भएका, अगाडियाट राम्रो देखिने, भूमिजस्तै व्यापक, सधैं अगाडि बढ्ने, दरिलो रथले हाम्रो भलो चिताउने तिमीहरूलाई हामीसमक्ष ल्याओस्।

इहेह जाता समवावशीतामरेपसा तन्वा३ नामभिः स्वैः।
जिष्णुर्वामन्यः सुमखस्य सूरिर्दिवो अन्यः सुभगः पुत्र ऊहे ॥४॥

हे अश्विनीकुमारहरू हो ! निर्दोष शरीर र प्रख्यात नाम भएका तिमीहरू दुवैले यस लोकमा राम्रो प्रशंसा कमाइसकेका छौ। तिमीहरू दुईमध्ये एक विजयी, राम्रो अनुहार हुनेलाई प्रेरित गर्दछौ भने अर्को दिव्यलोकका पुत्र हुनाले विपुल ऐश्वर्य धारण गर्दछौ।

प्र वां निचेरुः ककुहो वशाँ अनु पिशङ्गरूपः सदनानि गम्याः।
हरी अन्यस्य पीपयन्त वाजैर्मथ्ना रजांस्यश्विना वि घोषैः ॥५॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईमध्ये एकलाई सुनौलो रङ्गको, सर्वत्र गमनशील रथले इच्छा

लागेका दिशा र ठाउँमा पुऱ्याउँछ। अर्काको मन्थनबाट उत्पन्न भएको घोडा छ। त्यसले अन्न र उद्घोषसहित सम्पूर्ण लोकलाई परिपालन गर्दछ।

**प्र वां शरद्वान्वृषभो न निष्षाट् पूर्वीरिषश्चरति मध्व इष्णन्।**
**एवैरन्यस्य पीपयन्त वाजैर्वेषन्तीरूर्ध्वा नद्यो न आगुः ॥६॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईमध्ये एक पुराना शक्तिशाली सेनालाई पराजित गर्ने हौ र अन्नमा मिठो स्वाद उत्पन्न गर्नका लागि सर्वत्र विचरण गर्दछौ। अर्कोचाहिँ अन्न समृद्ध गराउने र उकालो लाग्ने नदीलाई जोडदार रूपमा प्रवाहित गर्दछौ। तिमीहरू दुवै हामीकहाँ आओ।

**असर्जि वां स्थविरा वेधसा गीर्बाळ्हे अश्विना त्रेधा क्षरन्ती।**
**उपस्तुताववतं नाधमानं यामन्नयामञ्छृणुतं हवं मे ॥७॥**

हे कार्यदक्ष अश्विनीकुमारहरू हो ! तिमीहरू दुईका लागि उहिलेदेखि प्रचलित, समार्थ्य बढाउने स्तुति तीन प्रकारले गरिन्थ्यो। हामीले गरेको प्रार्थना यात्रा गर्दै वा रोकिएर सुनिदिने कृपा गर र साधकलाई रक्षा गर।

**उत स्या वां रुशतो वप्ससो गीस्त्रिबर्हिषि सदसि पिन्वते नॄन्।**
**वृषा वां मेघो वृषणा पीपाय गोर्न सेके मनुषो दशस्यन् ॥८॥**

हे सामर्थ्यसम्पन्न अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैको देदीप्यमान स्वरूपको बयान गर्ने स्तोत्रवाणीले तीन कुशाका आसन राखिएका यज्ञमा मानिसलाई आनन्दी गराउँछ। गाईले दुध दिएर पौष्टिकता प्रदान गरेझैँ तिमीहरूका प्रेरणाले मेघले पोषण प्रदान गर्छ।

**युवां पूषेवाश्विना पुरन्धिरग्निमुषां न जरते हविष्मान्।**
**हुवे यद्वां वरिवस्या गृणानो विद्यामेषं वृजनं जीरदानुम् ॥९॥**

हे अश्विनीकुमारहरू हो ! अनेकौँलाई धारण गर्ने पूषादेव जसरी पोषण गर्दछन्, उसै गरी हविष्यान्न साथमा लिएर यजमान यज्ञद्वारा उषा र अग्निजस्तै तिमीहरू दुईको प्रार्थना गर्दछन्। हामी कर्तव्य निर्वाह गर्दै विनम्रतापूर्वक तिमीहरूलाई प्रार्थना गर्दछौँ। त्यसबाट हामी अति चाँडो अन्न, बल र धन प्राप्त गर्न सकौँ।

### [सूक्त - १८२]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - अश्विनीकुमार। छन्द - जगती त्रिष्टुप्।

**अभूदिदं वयुनमो षु भूषता रथो वृषण्वान्मदता मनीषिणः।**
**धियञ्जिन्वा धिष्ण्या विश्पलावसू दिवो नपाता सुकृते शुचिव्रता ॥१॥**

हे मनस्वी ज्ञानीहरू हो ! अश्विनीकुमारको सुदृढ रथ हाम्रा यज्ञनजिकै आइसकेको छ भन्ने हामीलाई थाहा भयो। हर्षित भएर तिमीहरू तिनलाई राम्रोसित सुसार गर। ती दुई पवित्र व्रतशील, द्युलोक धारणकर्ता, विश्पलाको कीर्ति बढाउने र सत्कर्म गर्नेहरूलाई सद्बुद्धि प्रदान गर्ने हुन्।

**इन्द्रतमा हि धिष्ण्या मरुत्तमा दस्रा दंसिष्ठा रथ्या रथीतमा।**
**पूर्णं रथं वहेथे मध्व आचितं तेन दाश्वांसमुप याथो अश्विना ॥२॥**

हे शत्रुसंहारक अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै प्रशंसा योग्य हुनाले इन्द्रदेव र मरुत्‌गणका गुण धारण गर्छौ। तिमीहरू दुवै सत्कर्ममा सधैँ संलग्न र रथीहरूमा अति श्रेष्ठ छौ। तिमीहरू मिठासले पूर्ण रथ लिएर यज्ञकर्ताका नजिक पुग्ने गर्छौ।

**किमत्र दस्रा कृणुथः किमासाथे जनो यः कश्चिदहविर्महीयते।**
**अति क्रमिष्टं जुरतं पणेरसुं ज्योतिर्विप्राय कृणुतं वचस्यवे ॥३॥**

हे शत्रुनाशक अश्विनीकुमारहरू हो ! तिमीहरू यहाँ के गर्दै छौ ? जुन मानिस हवि नदिईकन ठूला भएका छन्, तिनलाई छोडेर अघि बढ। कन्जुस र यज्ञहीन व्यक्तिलाई नाश गर। स्तोता विप्रहरूलाई प्रख्यात गराओ।

**जम्भयतमभितो रायतः शुनो हतं मृधो विदथुस्तान्यश्विना।**
**वाचंवाचं जरितुरत्निनीं कृतमुभा शंसं नासत्यावतं मम ॥४॥**

हे सत्यनिष्ठ अश्विनीकुमारहरू हो ! कुकुरझैँ हिंसक अत्याचारीलाई तिमीहरू सबै तिरबाट विनाश गरिदेओ। तिमीहरूले राम्ररी चिनेका आक्रमणकारीलाई संहार गर। हाम्रो स्तोताहरूका प्रत्येक स्तोत्र वचनलाई सम्पत्तिसम्पन्न गराओ र हाम्रा प्रशंसनीय स्तोत्रको संरक्षण गर।

**युवमेतं चक्रथुः सिन्धुषु प्लवमात्मन्वन्तं पक्षिणं तौग्र्याय कम्।**
**येन देवत्रा मनसा निरूहथुः सुपप्तनी पेतथुः क्षोदसो महः ॥५॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुईले आफ्ना सामर्थ्यले पक्षीझैं उड्ने नौका निर्माण गर्‍यौ। त्यसका कुशल चालक तिमीहरू दुवै भयौ। मनको गतिझैं वेगवान् त्यस नौकाले आकाशको माथिल्लो मार्गबाट यात्रा गर्‍यौ र महासागरका बीचमा पुगेर तुग्रका पुत्र भुज्युलाई रक्षा गर्‍यौ।

**अवविद्धं तौग्र्यमप्स्वन्तरनारम्भणे तमसि प्रविद्धम्।**
**चतस्रो नावो जठलस्य जुष्टा उदश्विभ्यामिषिताः पारयन्ति ॥६॥**

तुग्रका पुत्र भुज्यु समुद्रका बीचमा आधारहीन अन्धकार जलमा थिए। उनलाई मुक्त गर्नका लागि अश्विनीकुमारहरूले पठाएका चार नौकाहरू समुद्रका बीचमा पुगे। ती नौकाले उनलाई माथि उठाएर समुद्रपारि पुर्‍याइदिए।

**कः स्विद्वृक्षो निष्ठितो मध्ये अर्णसो यं तौग्र्यो नाधितः पर्यषस्वजत्।**
**पर्णा मृगस्य पतरोरिवारभ उदश्विना ऊहथुः श्रोमताय कम् ॥७॥**

समुद्रका पानीभित्र कुन रुख थियो होला र त्यो देखेर तुग्रका पुत्र भुज्युले आश्रय लिन पाऊन्। ढल्न लागेका चरालाई पँखेटाको भर भएझैं अश्विनीकुमारहरूले भुज्युलाई भरोसा दिएर माथि उकासे। यस कल्याणकारी कार्यबाट उनीहरू यशस्वी बने।

**तद्वां नरा नासत्यावनु ष्याद्यद्वां मानास उचथमवोचन्।**
**अस्मादद्य सदसः सोम्यादा विद्यामेषं वृजनं जीरदानुम् ॥८॥**

हे सत्यनिष्ठ, नेतृत्व प्रदान गर्ने अश्विनीकुमारहरू हो ! स्तोताले तिमीहरू दुईका लागि जुन स्तोत्र उच्चारण गरेका छन्, त्यसबाट तिमीहरू सन्तुष्ट होओ। यस सोमयागबाट हामी अन्न, बल, ऐश्वर्य आदि सम्पदा प्राप्त गरौं।

[सूक्त - १८३]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

**तं युञ्जाथां मनसो यो जवीयान् त्रिवन्धुरो वृषणा यस्त्रिचक्रः।**
**येनोपयाथः सुकृतो दुरोणंत्रिधातुना पतथो विर्न पर्णैः ॥१॥**

हे सामर्थ्यवान् अश्विनीकुमारहरू हो ! तिमीहरूको तीन पाङ्ग्रा र तीन वटा बस्ने ठाउँ भएको अत्यन्त गतिशील रथ छ। त्यसमा घोडा नारेर तयार गर। तीन धातुले बनेको त्यस रथमा चरोझैं उडेर तिमीहरू दुवै श्रेष्ठ कर्मीका नजिक पुग्दछौ।

**सुवृद्रथो वर्तते यन्नभि क्षां यत्तिष्ठथः क्रतुमन्तानु पृक्षे।**
**वपुर्वपुष्या सचतामियं गीर्दिवो दुहित्रोषसा सचेथे ॥२॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुई सधैं सत्कर्ममा तत्पर छौ र हविष्यान्न प्राप्त गर्न आफ्ना रथबाट भूमिमा गतिमान हुँदै यज्ञस्थलमा पुग्दछौ। महिमा गाउने स्तुतिले तिमीहरूलाई हर्षित गरोस्। तिमीहरू द्युलोककी पुत्री उषादेवीसँग हिँड्छौ।

**आ तिष्ठतं सुवृतं यो रथो वामनु व्रतानि वर्तते हविष्मान्।**
**येन नरा नासत्येषयध्यै वर्तिर्याथस्तनयाय त्मने च ॥३॥**

हे सत्यनिष्ठ अश्विनीकुमारहरू हो ! हविष्यान्नले पूरा भरिएका रथले तिमीहरू दुईलाई कर्तव्य निर्वाह गर्ने ठाउँमा लिएर जान्छ। त्यस सुन्दर वाहनमा तिमीहरू दुई बस। यजमान र उनका सन्तानलाई यज्ञको प्रेरणा दिन उनीहरूका घरमा आओ।

**मा वां वृको मा वृकीरा दधर्षीन्मा परि वर्क्तमुत माति धक्तम्।**
**अयं वां भागो निहित इयं गीर्दस्राविमे वां निधयो मधूनाम् ॥४॥**

हे शत्रुसंहारक अश्विनीकुमारहरू हो ! तिमीहरूका लागि हविर्द्रव्य तयार छ। यो स्तुति तिमीहरूकै निम्ति हो। मधु भरिएको पात्र तिमीहरूका लागि तयार छ। हामीलाई छोडेर अरूको सहयोग नगर। तिमीहरूकै कृपाले हामीमाथि वृकले हमला नगरोस्।

**युवां गोतमः पुरुमीळ्हो अत्रिर्दस्रा हवतेऽवसे हविष्मान्।**
**दिशं न दिष्टामृजूयेव यन्ता मे हवं नासत्योप यातम् ॥५॥**

हे शत्रुनाशक र सत्यनिष्ठ अश्विनीकुमारहरू हो ! हविष्यान्न अर्पित गर्दै गोतम, अत्रि र पुरुमीड

ऋषिहरू आआफ्नो संरक्षणका लागि तिमीहरूलाई आह्वान गर्दछन्। सरल मार्गबाट जानेहरू जसरी अभीष्ट लक्ष्यमा सजिलै पुग्छन्, उसै गरी हाम्रो आह्वान सुनेर तिमीहरू पनि हाम्रा नजिकै आओ।

**अतारिष्म तमसस्पारमस्य प्रति वां स्तोमो अश्विनावधायि।**
**एह यातं पथिभिर्देवयानैर्विद्यामेषं वृजनं जीरदानुम् ॥६॥**

हे अश्विनीकुमारहरू हो ! हामी अन्धकारबाट कटिसक्यौं। तिमीहरू दुवैका लागि स्तोत्र गाइएको छ। देवताहरू जुन मार्गबाट जान्छन्, उसै मार्गबाट यहाँ आओ। अन्न, बल र विजयश्री हामीलाई चाँडै प्रदान गर।

## [सूक्त - १८४]

**ऋषि** – अगस्त्य मैत्रावरुणि। **देवता** – अश्विनीकुमार। **छन्द** – त्रिष्टुप्।

**ता वामद्य तावपरं हुवेमोच्छन्त्यामुषसि वह्निरुक्थैः।**
**नासत्या कुह चित्सन्तावर्यो दिवो नपाता सुदास्तराय ॥१॥**

हे दिव्यलोकका आश्रयस्वरूप, सत्यपालक अश्विनीकुमारहरू हो ! आज हामीले तिमीहरूलाई आमन्त्रित गरेका छौं र भविष्यमा पनि बोलाउनेछौं। हामी अन्धकार समाप्त भएपछि बिहानीपख स्तोत्र गाउँदै अग्नि बाल्दछौं। तिमीहरू जहाँसुकै भए पनि असल पुरुष र दानवीरकहाँ अवश्य आओ भन्ने प्रार्थना छ।

**अस्मे ऊ षु वृषणा मादयेथामुत्पणींर्हतमूर्म्या मदन्ता।**
**श्रुतं मे अच्छोक्तिभिर्मतीनामेष्या नरा निचेतारा च कर्णैः ॥२॥**

हे नेतृत्व प्रदान गर्ने सामर्थ्यवान् अश्विनीकुमारहरू हो ! हामीलाई राम्ररी सन्तुष्ट गर र कन्जुसलाई समाप्त गर। हाम्रो असल भनाइको स्तोत्र सुन्ने कृपा गर, किनभने तिमीहरू दुवै असल पात्र रोज्दछौ र तिनीहरूमाथि नै कृपा बर्साउँछौ।

**श्रिये पूषन्निषुकृतेव देवा नासत्या वहतुं सूर्यायाः।**
**वच्यन्ते वां ककुहा अप्सु जाता युगा जूर्णेव वरुणस्य भूरेः ॥३॥**

हे दानी, सत्यनिष्ठ, पोषणकर्ता अश्विनीकुमारहरू हो ! उषाकालमै रथमा चढेर यश पाउने कामनाले तिमीहरू दुवै बाणको गतिझैं सरल मार्गबाट हिँड्छौ। त्यस बेला वरुणदेवले समुद्रबाट पाएको अति विशाल र पुरानो रथका घोडाझैं तिमीहरू दुवैका घोडा पनि प्रशंसित हुन्छन्।

**अस्मे सा वां माध्वी रातिरस्तु स्तोमं हिनोतं मान्यस्य कारोः।**
**अनु यद्वां श्रवस्या सुदानू सुवीर्याय चर्षणयो मदन्ति ॥४॥**

हे श्रेष्ठ दानवीर, मधुर रसयुक्त अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैको सहायता हामीलाई प्राप्त भइरहोस्। तिमीहरू मान्यजनबाट रचित स्तोत्रलाई प्रेरित गर। तिमीहरू दुवैको अनुकूलता प्राप्त गरेर मानिसहरू पराक्रम गर्ने आशाले आनन्दित हुन्छन्।

**एष वां स्तोमो अश्विनावकारि मानेभिर्मघवाना सुवृक्ति।**
**यातं वर्तिस्तनयाय त्मने चागस्त्ये नासत्या मदन्ता ॥५॥**

हे वैभवशाली, सत्यनिष्ठ अश्विनीकुमारहरू हो ! तिमीहरू दुईका लागि सुन्दर स्तोत्र तयार छ। यसबाट हर्षित भएर तिमीहरू परिवारसहित अगस्त्य ऋषिका घरमा पुग।

**अतारिष्म तमसस्पारमस्य प्रति वां स्तोमो अश्विनावधायि।**
**एह यातं पथिभिर्देवयानैर्विद्यामेषं वृजनं जीरदानुम् ॥६॥**

हे अश्विनीकुमारहरू हो ! हामी यस अन्धकाररूपी अज्ञानबाट मुक्त भइसकेका छौं। तिमीहरू दुवैका लागि स्तोत्र गाउँदै छौं। देवताहरू हिँडने मार्गबाट यात्रा गर्दै तिमीहरू हामीकहाँ आओ र अन्न, बल एवं विजयश्री हामीलाई चाँडै प्रदान गर।

## [सूक्त - १८५]

**ऋषि** – अगस्त्य मैत्रावरुणि। **देवता** – द्यावापृथिवी। **छन्द** – त्रिष्टुप्।

**कतरा पूर्वा कतरापरायोः कथा जाते कवयः को वि वेद।**
**विश्वं त्मना बिभृतो यद्ध नाम वि वर्तेते अहनी चक्रियेव ॥१॥**

हे ऋषिहरू हो ! यी दुवै कसरी उत्पन्न भए, यी दुवैमा कुनचाहिँ पहिले उत्पन्न भए र पछिल्लो कुन हो ? यो रहस्य कसले राम्रोसँग जान्न सक्दछ ? यी दुवैले सम्पूर्ण विश्व धारण गरेका छन् र चक्रझैं घुम्दै दिनरात बनाउँछन्।

भूरि द्वे अचरन्ती चरन्तं पद्वन्तं गर्भमपदी दधाते।
नित्यं न सूनुं पित्रोरुपस्थे द्यावा रक्षतं पृथिवी नो अभ्वात् ॥२॥

स्वयं अचल हुँदाहुँदै पनि यी दुवै असङ्ख्य डुल्न सक्नेहरूलाई धारण गर्दछन्। आमाबाबुले नजिकैको सन्तानलाई सहायता गरेझैं द्युलोक र पृथिवीले सबै प्राणीलाई आपद्बाट जोगाऊन्।

अनेहो दात्रमदितेरनर्वं हुवे स्वर्वदवधं नमस्वत्।
तद्रोदसी जनयतं जरित्रे द्यावा रक्षतं पृथिवी नो अभ्वात् ॥३॥

हामी अविनाशी पृथ्वीबाट पापमुक्त, क्षयरहित, हिंसारहित, तेजस्वी र विनम्रता प्रदान गर्ने धनवैभवको कामना गर्दछौं। हे द्यावापृथिवी ! यस्तो वैभव स्तोतालाई प्रदान गर। यी दुवै पापकर्मबाट हामीलाई रक्षा गरुन्।

अतप्यमाने अवसावन्ती अनु ष्याम रोदसी देवपुत्रे।
उभे देवानामुभयेभिरह्नां द्यावा रक्षतं पृथिवी नो अभ्वात् ॥४॥

द्यावापृथिवीलोक देवशक्तिका उत्पादक हुन्। यिनीहरू दुःखी नहुने, कार्यमा ढिलो नगर्ने आफ्ना संरक्षण शक्तिले प्राणीहरूको रक्षा गर्दछन्। दिनरात दिव्यता सम्पन्न छन्। हामी यिनका अनुकूल रहौं। द्यावापृथिवी दुवैले हामीलाई पापबाट मुक्त गरुन्।

सङ्गच्छमाने युवती समन्ते स्वसारा जामी पित्रोरुपस्थे।
अभिजिघ्रन्ती भुवनस्य नाभिं द्यावा रक्षतं पृथिवी नो अभ्वात् ॥५॥

सधैं युवती देखिने यी दुवै दिदीबहिनीजस्ता आपसमा सहयोगी भएर पिताका नजिकै रहँदै भुवनको केन्द्रस्थल चुम्दछन्। द्यावापृथिवीले हामीलाई आपद्बाट जोगाऊन्।

उर्वी सद्मनी बृहती ऋतेन हुवे देवानामवसा जनित्री।
दधाते ये अमृतं सुप्रतीके द्यावा रक्षतं पृथिवी नो अभ्वात् ॥६॥

श्रेष्ठ स्वरूप भएका द्यावापृथिवीले जलरूपी अमृत धारण गर्दछन्। यस्ता विशाल आश्रयरूप र सबैलाई उब्जाउने दुई लोक देवशक्तिलाई प्रसन्न गराउँछन्। त्यसका लागि उनीहरू देवशक्तिलाई यज्ञकार्यमा आह्वान गर्दछन्। द्यावापृथिवीले पापबाट जोगाऊन्।

उर्वी पृथ्वी बहुले दूरेअन्ते उप ब्रुवे नमसा यज्ञे अस्मिन्।
दधाते ये सुभगे सुप्रतूर्ती द्यावा रक्षतं पृथिवी नो अभ्वात् ॥७॥

सुन्दर स्वरूप र श्रेष्ठ दाताका रूपमा द्यावापृथिवीले सबैलाई धारण गर्दछन्। यस्ता विशाल, व्यापक, विभिन्न आकारका र जसको सीमा अनन्त छ, ती द्यावापृथिवीलाई यज्ञमा विनम्र भावले हामी प्रार्थना गर्दछौं। उनीहरूले हामीलाई सङ्कटबाट जोगाऊन्।

देवान्वा यच्चकृमा कच्चिदागः सखायं वा सदमिज्जास्पतिं वा।
इयं धीर्भूया अवयानमेषां द्यावा रक्षतं पृथिवी नो अभ्वात् ॥८॥

यदि हामीबाट देवशक्ति, मित्रजन अथवा समस्त जगत्का सृष्टिकर्ता परमेश्वरप्रति कुनै पाप कर्म भइहाल्यो भने त्यसको शमन गर्नका लागि हाम्रो विवेकबुद्धि सक्षम होस्। द्यावापृथिवीले पाप कर्मबाट हामीलाई रक्षा गरुन्।

उभा शंसा नर्या मामविष्टामुभे मामूती अवसा सचेताम्।
भूरि चिदर्यः सुदास्तरायेषा मदन्त इषयेम देवाः ॥९॥

मनुष्यका कल्याणकारी एवं स्तुतियोग्य द्यावापृथिवी यी दुवै लोकले हामीलाई आश्रय दिइरहुन्। दुवै संरक्षक द्यावापृथिवीले आफ्नो संरक्षक साधनले हामीलाई पोषण गरुन्। हे देवशक्तिहरू हो ! महान विचार लिएर सहर्ष अन्न दान गर्ने बानी बसाइराख्नका लागि प्रशस्त धनसम्पदा पाउने हामी कामना गर्दछौं।

ऋतं दिवे तदवोचं पृथिव्या अभिश्रावाय प्रथमं सुमेधाः।
पातामवद्याद्दुरितादभीके पिता माता च रक्षतामवोभिः ॥१०॥

सरल बुद्धि भएका हामी द्युलोक र पृथिवीलोकको गरिमासित सम्बन्धित यो सत्य वाणी घोषणा गर्दछौं। सँगसँगै रहने यी दुवै लोकले हामीलाई अनिष्टबाट जोगाऊन्। पितामातासरिका द्युलोक र पृथिवीले संरक्षण साधनबाट हामीलाई रक्षा गरुन्।

इदं द्यावापृथिवी सत्यमस्तु पितर्मातर्यदिहोपब्रुवे वाम्।
भूतं देवानामवमे अवोभिर्विद्यामेषं वृजनं जीरदानुम् ॥११॥
हे पितामातासरिका द्यावापृथिवी ! तिमीहरू दुवैका निमित्त यस यज्ञमा हामी स्तुति गर्दछौं। त्यसको प्रतिफल हामीलाई प्राप्त होस्। तिमीहरू दुवै देवत्वयुक्त संरक्षण साधनले हामीलाई रक्षा गर त्यसपछि अन्न, बल र दीर्घायु प्रदान गर।

[सूक्त - १८६]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

आ न इळाभिर्विदथे सुशस्ति विश्वानरः सविता देव एतु।
अपि यथा युवानो मत्सथा नो विश्वं जगदभिपित्वे मनीषा ॥१॥
नाना रूपमा प्रशंसित कल्याणकारी सवितादेव अन्नयुक्त भएर हाम्रा यज्ञमा आऊन्। हे वरुणदेव ! तिमी जुन रूपमा आनन्दित छौ, उसै किसिमले हाम्रा यज्ञमा आएर आफ्नो कृपाले हामीलाई र सम्पूर्ण विश्वलाई हर्षित गर।

आ नो विश्व आस्क्रा गमन्तु देवा मित्रो अर्यमा वरुणः सजोषाः।
भुवन्यथा नो विश्वे वृधासः करन्त्सुषाहा विथुरं न शवः ॥२॥
शत्रुमाथि आक्रमण गर्ने, परस्पर प्रीति भएका मित्र, वरुण र अर्यमादेव हामीनजिक आऊन् र सकेसम्म हाम्रा प्रगतिमा सहायक होऊन्। यी देवताहरू शत्रुलाई परास्त गर्नका लागि सामर्थ्यले युक्त होऊन् र हाम्रो शक्ति क्षीण नगरुन्।

प्रेष्ठं वो अतिथिं गृणीषेऽग्निं शस्तिभिस्तुर्वणिः सजोषाः।
असद्यथा नो वरुणः सुकीर्तिरिषश्च पर्षदरिगूर्तः सूरिः ॥३॥
शत्रुसंहारक र सबैसित स्नेहपूर्वक व्यवहार गर्ने अग्निदेव अतिथिजस्तै पूज्य छन्। हामी स्तोत्रले उनलाई स्तुति गर्दछौं। शत्रुमाथि आक्रमण गर्ने र ज्ञानसम्पन्न वरुणदेवले हामीलाई अन्न र यथोचित कीर्ति प्रदान गरुन्।

उप व एषे नमसा जिगीषोषासानक्ता सुदुघेव धेनुः।
समाने अहन्विमिमानो अर्कं विषुरूपे पयसि सस्मिन्नूधन् ॥४॥
हे सम्पूर्ण विश्वका सञ्चालक देवशक्तिहरू हो ! गाईबाट उत्पन्न दुधरूपी प्राणले सम्पूर्ण तेजको अनुभूति गर। असल दुधालु गाई गोठालाका नजिक गएझैं मनोविकृतिरूपी शत्रुमाथि विजय प्राप्त गर्ने रहरले विहान र बेलुकाका दुवै सन्ध्या कालमा तिमीहरूका नजिक हामी साधकहरू जान्छौं।

उत नोऽहिर्बुध्न्योः मयस्कः शिशुं न पिप्युषीव वेति सिन्धुः।
येन नपातमपां जुनाम मनोजुवो वृषणो यं वहन्ति ॥५॥
हे विजुलीको रूपमा रहेका अग्निदेव ! अन्तरिक्षका मेघबाट जल बर्साएर हामीलाई सुखी बनाऊ। बालकलाई पालनपोषण गर्ने आमाझैं नदीहरू पानीले छताछुल्ल भरिएर हाम्रा नजिक आऊन्। पानी नपोखियोस् भनेर हामी अग्निदेवलाई वन्दना गर्दछौं। मनझैं वेगवान् अश्वले उनलाई लिएर जान्छन्।

उत न ईं त्वष्टा गन्त्वच्छा स्मत्सूरिभिरभिपित्वे सजोषाः।
आ वृत्रहेन्द्रश्चर्षणिप्रास्तुविष्टमो नरां न इह गम्याः ॥६॥
ज्ञानीहरूसित स्नेहपूर्ण व्यवहार गर्ने त्वष्टादेव र मनुष्यलाई सन्तोष दिन वृत्रासुरको वध गरेर सर्वत्र प्रशंसनीय इन्द्रदेव हाम्रा यस यज्ञमा आएर सत्कर्ममा सहायक होऊन्।

उत न ईं मतयोऽश्वयोगाः शिशुं न गावस्तरुणं रिहन्ति।
तमीं गिरो जनयो न पत्नीः सुरभिष्टमं नरां नसन्त ॥७॥
गाईले आफ्नो बाछो स्नेहले चाटेझैं उत्तम बुद्धिका धनी स्तोताहरू चिरयुवा इन्द्रदेवप्रति स्नेह प्रकट गर्दछन्। सन्तान जन्माउन चाहने स्त्रीले पुरुषलाई तानेझैं हाम्रा स्तुतिले महायशस्वी इन्द्रदेवलाई तान्दछन्।

उत न ईं मरुतो वृद्धसेनाः स्मद्रोदसी समनसः सदन्तु।
पृषदश्वासोऽवनयो न रथा रिशादसो मित्रयुजो न देवाः ॥८॥
दुष्ट शत्रु विनाश गर्ने, मित्रजस्तै पारस्परिक स्नेह भएका, अचम्मका अश्व युक्त, मनको विचार

समान भएका, तेजस्वी, महान् सामर्थ्यसम्पन्न मरुत्‌गण र द्यावापृथिवी रथमा विराजमान भएर रक्षकका रूपमा हाम्रा नजिकै आऊन्।

**प्र नु यदेषां महिना चिकित्रे प्र युञ्जते प्रयुजस्ते सुवृक्ति।**
**अध यदेषां सुदिने न शरुर्विश्वमेरिणं प्रुषायन्त सेनाः ॥९॥**

असल स्तुतिले हर्षित भएका मरुत्‌गण रथमा अश्व नार्दछन्। त्यसपछि दिउँसो सर्वत्र प्रकाश पुगेझैं मरुत्‌का सेना सुख्खा भूमि जलले सिँचाइ गरेर उव्जाउ बनाउँछन्। यसो भएपछि यी मरुत्‌गणको ख्याति अझै बढ्छ।

**प्रो अश्विनाववसे कृणुध्वं प्र पूषणं स्वतवसो हि सन्ति।**
**अद्वेषो विष्णुर्वात ऋभुक्षा अच्छा सुम्नाय ववृतीय देवान् ॥१०॥**

हे मानिसहरू हो ! आफ्नो रक्षा गर्नका लागि अश्विनीकुमार, पूषादेव, विद्वेषरहित विष्णुदेव, वायुदेव, ऋभुहरूका स्वामी आदि सबै देवताको स्तुति गर। हामी पनि सुख प्राप्तिका लागि देवताहरूको प्रार्थना गर्दछौं।

**इयं सा वो अस्मे दीधितिर्यजत्रा अपिप्राणी च सदनी च भूयाः।**
**नि या देवेषु यतते वसूयुर्विद्यामेषं वृजनं जीरदानुम् ॥११॥**

हे यज्ञदेव ! तिमीहरूका तेजले देवताहरूलाई ऐश्वर्य प्राप्तिका लागि प्रेरित गर्दछ। मानिसका अभिलाषा पूर्ण गर्ने र आवास प्रदान गर्ने त्यो दिव्य तेज हामी धारण गरौं। त्यसबाट हामी राम्रो अन्न, उत्तम बल र लामो आयुको जीवन प्राप्त गर्न सकौं।

## [सूक्त – १८७]

**ऋषि** – अगस्त्य मैत्रावरुणि। **देवता** – अन्न। **छन्द** – अनुष्टुप् उष्णिक बृहती गायत्री।

**पितुं नु स्तोषं महो धर्माणं तविषीम्। यस्य त्रितो व्योजसावृत्रं विपर्वमर्दयत् ॥**

जसका बलले तीनै लोकमा यशस्वी इन्द्रदेवले वृत्रासुरलाई टुक्र्याएर मारिदिए, उनै शक्तिशाली, सबैको पोषक र धारणकर्ता अन्नदेवलाई हामी स्तुति गर्दछौं।

**स्वादो पितो मधो पितो वयं त्वा ववृमहे। अस्माकमविता भव ॥२॥**

हे स्वादिष्ट, पालनकर्ता र मिठासपूर्ण रसले पोषण गर्ने अन्नदेव ! तिमीभित्र रहेको पोषक तत्त्व हामी धारण गर्दछौं, तिमी हाम्रा पोषक हौ।

**उप नः पितवा चर शिवः शिवाभिरूतिभिः।**
**मयोभुरद्विषेण्यः सखा सुशेवो अद्वयाः ॥३॥**

हे पालनकर्ता अन्नदेव ! तिमी कल्याणकारी, सुखप्रद, विद्वेषरहित, मित्रजस्तै हितैषि, सम्मानपूर्वक सेवन गरिने र रिसडाहबाट मुक्त छौ। तिमी मङ्गलकारी संरक्षणयुक्त पोषक तत्वले युक्त भएर हामीसमक्ष आऊ।

**तव त्ये पितो रसा रजांस्यनु विष्ठिताः। दिवि वाताइव श्रिताः ॥४॥**

हे परिपोषक अन्नदेव ! अन्तरिक्षमा वायु प्रतिष्ठित भएझैं तिमीहरूको रस विभिन्न किसिमले सम्पूर्ण लोकमा विद्यमान छ।

**तव त्ये पितो ददतस्तव स्वादिष्ठ ते पितो।**
**प्र स्वाद्मानो रसानां तुविग्रीवाइवेरते ॥५॥**

हे परिपोषक अन्नदेव ! तिम्रा उपासक कृषकहरू तिमीबाट दानको वृत्ति ग्रहण गर्दछन्। तिम्रा साधकले तिम्रो पोषणशक्ति बढाउँछन्। तिम्रो रस सेवन गर्नेहरूको गर्धन बलियो हुन्छ र सर्वत्र विचरण गर्दछन्।

**त्वे पितो महानां देवानां मनो हितम्।**
**अकारि चारु केतुना तवाहिमवसावधीत् ॥६॥**

हे संसारका पालक अन्नदेव ! ठूला देवताको मन पनि तिम्रा लागि नै लोभिन्छ। तिम्रै पोषण र संरक्षण शक्तिले अहि नामको असुर मार्ने ठूलो काम इन्द्रदेवले गरेका थिए।

**यददो पितो अजगन्विवस्व पर्वतानाम्।**
**अत्राचित्रो मधो पितोऽरं भक्षाय गम्याः ॥७॥**

हे संसारका पालनकर्ता अन्नदेव ! बादलको भरिपूर्ण र विशुद्ध जल तिमीसित पुगेपछि हाम्रो पोषणका लागि तिमी यस विश्वमा मनग्गे परिमाणमा उपलब्ध भइदेऊ।

**यदपामोषधीनां परिशमारिशामहे। वातापे पीव इद्भव ॥८॥**

जल र औषधिका तत्त्वले भरिपूर्ण सबै खालको अन्न हामीले ग्रहण गरेपछि हे शरीर ! तिमीले यस पोषक अन्नले स्वस्थ र बलिष्ठ भइदेऊ।

**यत्ते सोम गवाशिरो यवाशिरो भजामहे। वातापे पीव इद्भव ॥९॥**

सुखको रूपमा परिचित हे अन्नदेव ! जौं, गहुँ आदि खाद्यान्नका साथमा गाईको दुध, घिउ आदि पौष्टिक पदार्थ खाएर हाम्रो शारीरिक स्वास्थ्य बलियो होस्।

**करम्भ ओषधे भव पीवो वृक्क उदारथिः। वातापे पीव इद्भव ॥१०॥**

हे परिपक्व अन्नदेव ! तिमी पौष्टिक, आरोग्यप्रद र इन्द्रियको सामर्थ्य बढाउँछौ। पाकेका अन्न सेवन गर्नाले हाम्रो शारीरिक स्वास्थ्यको उन्नति होस्।

**तं त्वा वयं पितो वचोभिर्गावो न हव्या सुषूदिम।**
**देवेभ्यस्त्वा सधमादमस्मभ्यं त्वा सधमादम् ॥११॥**

हे पालनकर्ता इन्द्रदेव ! तिमी देवता र मनुष्य दुवै शक्तिलाई नै समान रूपले आनन्दित गराउँछौ। प्रशंसित स्तोत्रले तिमीलाई गोठालाले गाई दुहेझैं गरी दोहन गरोस्।

[सूक्त - १८८]

**ऋषि** - अगस्त्य मैत्रावरुणि। **देवता** - अग्नि इडा भारती त्वष्टा। **छन्द** - गायत्री।

**समिद्धो अद्य राजसि देवो देवैः सहस्रजित्। दूतो हव्या कविर्वह ॥१॥**

हे सहस्रौं शत्रु जित्ने इन्द्रदेव ! तेजस्वी रूपमा देवताहरूबाट तिमी प्रदीप्त भयौ। हे क्रान्तिकारी ! हामीबाट दिइएको आहुति दूतजस्तो बनेर तिमी देवतालाई पुऱ्याइदेऊ।

**तनूनपादृतं यते मध्वा यज्ञः समज्यते। दधत्सहस्रिणीरिषः ॥२॥**

हजारौं किसिमका अन्नमा प्राणतत्त्व परिपोषित गर्दै स्वास्थ्यका संरक्षक, पूजनीय अग्निदेव यज्ञभूमिमा जान्छन् र हविष्यान्नमा मधुर रस सञ्चार गराउँछन्।

**आजुह्वानो न ईड्यो देवाँ आ वक्षि यज्ञियान्। अग्ने सहस्रसा असि ॥३॥**

हे अग्निदेव ! तिमी हजारौं किसिमका ऐश्वर्य र सम्पदा धारण गर्दछौ। त्यसैले हामीबाट बोलाइँदा अनेकौं आदरणीय देवताहरूका साथमा हाम्रा यज्ञमा आइदेऊ।

**प्रचीनं बर्हिरोजसा सहस्रवीरमस्तृणन्। यत्रादित्या विराजथ ॥४॥**

हे आदित्यगण ! प्राचीन कालदेखि नै हजारौं देवताहरूका साथ तिमीहरू विराजमान छौ। तिमीहरू बस्ने कुशको आसन तिमीहरूकै शक्तिले यजमानहरू ओछ्याउँछन्।

**विराट् सम्राड्विभ्वीः प्रभ्वीर्बह्वीश्च भूयसीश्च याः। दुरो घृतान्यक्षरन् ॥५॥**

राजाजस्ता विराट्, व्यापक अधिकारयुक्त यज्ञदेवलाई सबैले घिउ वर्षा गराउँछन्।

**सुरुक्मे हि सुपेशसाधि श्रिया विराजतः। उषासावेह सीदताम् ॥६॥**

उषा र रात्रिदेवी अति राम्रो सजिएका छन्। हे देवीहरू हो ! तिमीहरू दुवै यस यज्ञका भूमिमा रहिदेओ।

**प्रथमा हि सुवाचसा होतारा दैव्या कवी। यज्ञं नो यक्षतामिमम् ॥७॥**

शुद्ध र स्पष्ट बोल्ने, दिव्य गुणयुक्त, मेधावी होताहरूले हाम्रो यज्ञ सम्पन्न गराऊन्।

**भारतीळे सरस्वति या वः सर्वा उपब्रुवे। ता नश्चोदयत श्रिये ॥८॥**

हे भारती, इडा र सरस्वती ! तिमीहरू सबैलाई हामी निम्त्याउँछौं। तिमीहरू तीनैले हामीलाई ऐश्वर्य र वैभवतर्फ प्रेरित गर।

**त्वष्टा रूपाणि हि प्रभुः पशून्विश्वान्त्समानजे। तेषां नः स्फातिमा यज ॥९॥**

हे त्वष्टादेव ! स्वरूप प्रदान गर्नका लागि सक्षम तिमी नै पशुहरूका निर्माता पनि हौ, हाम्रा लागि पशुधन वृद्धि गराइदेऊ।

**उप त्मन्या वनस्पते पाथो देवेभ्यः सृज। अग्निर्हव्यानि सिष्वदत् ॥१०॥**

हे वनस्पति ! तिम्रा सामर्थ्यले हव्य पदार्थ उब्जाऊ, अग्निदेवले त्यो हव्य सेवन गरुन्।

**पुरोगा अग्निर्देवानां गायत्रेण समज्यते। स्वाहाकृतीषु रोचते ॥११॥**

देवताहरूका अगुवाजस्ता गायत्री मन्त्रको उच्चारणले विभूषित अग्निदेव स्वाहा शब्दसँगै दिइएको आहुतिले प्रज्वलित हुन्छन्।

[सूक्त - १८९]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**अग्ने नय सुपथा राये अस्मान्विश्वानि देव वयुनानि विद्वान्।**
**युयोध्य१ स्मज्जुहुराणमेनो भूयिष्ठां ते नमउक्तिं विधेम ॥१॥**

दिव्य गुणले युक्त हे अग्निदेव ! सबै मार्ग जानेका हुनाले हामी याजकहरूलाई यज्ञको फल प्राप्त गराउनका लागि तिमी नै सन्मार्गतिर लैजाऊ। हामीलाई कुटिल आचरण भएका शत्रु र पापबाट मुक्त राख। तिम्रा लागि स्तोत्र र नमस्कारको व्यवस्था गर्दछौं।

**अग्ने त्वं पारया नव्यो अस्मान्त्स्वस्तिभिरति दुर्गाणि विश्वा।**
**पूश्च पृथ्वी बहुला न उर्वी भवा तोकाय तनयाय शं योः ॥२॥**

हे अग्निदेव ! तिमी सधैंका नौला र अति प्रशंसनीय छौ। तिम्रो कृपाले मङ्गलकारी मार्गबाट हामी सबै खालका कठिन पाप र दुःखकष्टबाट मुक्त रहन सकौं। यो धर्ती र बसेको ठाउँ हाम्रा लागि अति महान् छ। हाम्रा सन्तानका लागि तिमी सुखदायी बन।

**अग्ने त्वमस्मद्युयोध्यमीवा अनग्नित्रा अभ्यमन्त कृष्टीः।**
**पुनरस्मभ्यं सुविताय देव क्षां विश्वेभिरमृतेभिर्यजत्र ॥३॥**

हे अग्निदेव ! यज्ञद्वारा हाम्रो रोग निवारण गर। यज्ञरहित मानिस सधैं रोग र विकृतिले त्रस्त रहन्छन्। हे देवताहरू हो ! तिमीहरूले अमरत्व प्राप्त गरेका छौ। सबै दिव्य गुण युक्त छौ, त्यसैले हाम्रो कल्याण गर्ने भावनाले सङ्गठित भएर यज्ञस्थलमा आइदेओ।

**पाहि नो अग्ने पायुभिरजस्रैरुत प्रिये सदन आ शुशुक्वान्।**
**मा ते भयं जरितारं यविष्ठ नूनं विदन्मापरं सहस्वः ॥४॥**

हे अग्निदेव ! निरन्तर आफ्ना संरक्षण शक्तिले हामीलाई रक्षा गर र हाम्रो प्रिय यज्ञमा आएर सर्वत्र प्रकाशमान भइदेऊ। हे चिरयुवा अग्निदेव ! तिम्रा स्तोताहरू सबै खालका भयबाट मुक्त रहन सकून्। हे बलले उब्जाइएका अग्निदेव ! तिम्रा सामर्थ्यले अन्य सङ्कटका समयमा पनि हामी ढुक्क हुन सकौं।

**मा नो अग्नेऽव सृजो अघायाविष्यवे रिपवे दुच्छुनायै।**
**मा दत्वते दशते मादते नो मा रीषते सहसावन्परा दाः ॥५॥**

हे बलवान् अग्निदेव ! पापका मूर्ति, अधर्मको अन्न खाने, सुख नाश गर्ने शत्रुका जिम्मामा हामीलाई नछोडिदेऊ। दाँतले टोक्ने सर्पजस्ता शत्रुका अधीनमा हामीलाई नपर र हिंसक एवं लुटेर असुरहरूका बन्धनमा पनि हामीलाई पर्न नदेऊ।

**वि घ त्वावाँ ऋतजात यंसद्गृणानो अग्ने तन्वे३ वरूथम्।**
**विश्वाद्रिरिक्षोरुत वा निनित्सोरभिह्रुतामसि हि देव विष्पट् ॥६॥**

हे यज्ञका लागि उत्पन्न अग्निदेव ! साधकहरूले तिम्रो उचित किसिमको प्रार्थना गर्दै शारीरिक दृष्टिले परिपुष्ट हुन्छन्। त्यसो भएपछि हिंसक एवं निन्दक दुष्ट व्यक्तिबाट तिनीहरू जोगिन्छन्। हे दिव्य गुणले सम्पन्न अग्निदेव ! दुष्ट बुद्धि भएका, दुष्ट व्यवहार भएका र दुष्कर्मले भरिएकाहरूलाई तिमी अवश्य पनि दण्डित गर्दछौ।

**त्वं ताँ अग्न उभयान्वि विद्वान्वेषि प्रपित्वे मनुषो यजत्र।**
**अभिपित्वे मनवे शास्यो भूर्मर्मृजेन्य उशिग्भिर्नाक्रः ॥७॥**

हे प्रशंसनीय अग्निदेव ! यज्ञप्रेमी र यज्ञविमुखहरूलाई राम्ररी चिनेर बिहानीपख तिमी मानिसहरूका नजिक पुग्दछौ। पराक्रमसम्पन्न हुनाले तिमी यज्ञमा उपस्थित भएका मानिसलाई ऋत्विक्ले यजमानलाई झैं सन्मार्गतर्फ प्रेरित गर्दछौ।

**अवोचाम निवचनान्यस्मिन्मानस्य सूनुः सहसाने अग्नौ।**
**वयं सहस्रमृषिभिः सनेम विद्यामेषं वृजनं जीरदानुम् ॥८॥**

यज्ञको उत्पत्ति गराउने र शत्रुको संहार गर्ने अग्निदेवलाई हामी सबै किसिमका स्तोत्रले प्रशंसा गर्दछौं। हामी इन्द्रियरूपी ऋषिहरूलाई समर्थ बनाऔं र अनेकौं ऐश्वर्यको उपभोग गरौं। त्यसपछि हामीलाई अन्न, बल र लामो आयु प्राप्त होस्।

[सूक्त - १९०]

ऋषि - अगस्त्य मैत्रावरुणि। देवता - बृहस्पति। छन्द - त्रिष्टुप्।

**अनर्वाणं वृषभं मन्द्रजिह्वं बृहस्पतिं वर्धया नव्यमर्कैः।**
**गाथान्यः सुरुचो यस्य देवा आशृण्वन्ति नवमानस्य मर्ताः ॥१॥**

मनुष्यहरू हो ! द्वेषरहित, बलशाली, मधुरभाषी, स्तुतियोग्य बृहस्पतिदेवका मधुर, तेजस्वी एवं प्रशंसनीय वचन सबै मानिस र देवताहरूले श्रद्धापूर्वक सुन्दछन्। हामी तिनैको गुणगान गरौं।

**तमृत्विया उप वाचः सचन्ते सर्गो न यो देवयतामसर्जि।**
**बृहस्पतिः सह्यञ्जो वरांसि विभ्वाभवत्समृते मातरिश्वा ॥२॥**

उचित समयमा गरिएको स्तुति बृहस्पतिदेवले ग्रहण गर्दछन्। बृहस्पतिदेवले नयाँ सृष्टि गरेझैं देवता बन्न चाहने मानिसको उत्पत्ति गरे। ती वायुजस्ता गतिशील बृहस्पतिदेव उत्तम वस्तुहरूका साथ आफ्नो प्रचण्ड शक्तिले उत्पन्न भएका हुन्।

**उपस्तुतिं नमस उद्यतिं च श्लोकं यंसत्सवितेव प्र बाहू।**
**अस्य क्रत्वाहन्यो३ यो अस्ति मृगो न भीमो अरक्षसस्तुविष्मान् ॥३॥**

सूर्यदेवले बाहाँ फैलाएझैं बृहस्पतिदेव याजकको स्तुति, अन्न र मन्त्र स्वीकार गर्दछन्। बृहस्पतिदेवको क्रूरतारहित कर्मले नै सूर्यदेव भयङ्कर सिंहजस्तो बलियो हुन्छन्।

**अस्य श्लोको दिवीयते पृथिव्यामत्यो न यंसद्यक्षभृद्विचेताः।**
**मृगाणां न हेतयो यन्ति चेमा बृहस्पतेरहिमायाँ अभि द्यून् ॥४॥**

बृहस्पतिदेवको कीर्ति द्युलोक र पृथिवीलोकमा सर्वत्र व्याप्त छ। शीघ्रगामी अश्वजस्तै ज्ञानीहरूको भरणपोषण गर्ने, विशिष्ट ज्ञानले सम्पन्न यी बृहस्पतिदेव सबै लोकलाई सहयोग गर्नका लागि प्रयत्नशील रहन्छन्। पशु संहार गर्ने हतियारझैं बृहस्पतिदेवका अस्त्रहरू दिउँसो छल गर्ने कपटी असुरलाई संहार गर्दछन्।

**ये त्वा देवोस्रिकं मन्यमानाः पापा भद्रमुपजीवन्ति पज्राः।**
**न दूढ्ये३ अनु ददासि वामं बृहस्पते चयस इत्पियारुम् ॥५॥**

हे देवताहरू हो ! धनको घमन्ड गर्ने बुढो गोरुजस्ता जति पापी जीवित छन्, तिमीहरू त्यस्ता दुर्बुद्धिग्रस्तलाई ऐश्वर्य दिँदैनौ। हे बृहस्पतिदेव ! तिमी सोमपान गर्नेहरूमाथि मात्रै आफ्नो कृपाको वर्षा गराइराख।

**सुप्रैतुः सूयवसो न पन्था दुर्नियन्तुः परिप्रीतो न मित्रः।**
**अनर्वाणो अभि ये चक्षते नोऽपीवृता अपोर्णुवन्तो अस्थुः ॥६॥**

बृहस्पतिदेव सन्मार्गगामी र उत्तम अन्न हुने मानिसका असल पथप्रदर्शक हुन्। उनी दुष्ट नियन्त्रण गर्नेहरूका मित्र हुन्। जो निष्पाप भएर हामीतिर हेर्दछन्, ती अज्ञानरूपी अन्धकारले छोपिएका भए पनि अज्ञान त्यागेर ज्ञानमार्गमा अगाडि बढ्दछन्।

**सं यं स्तुभोऽवनयो न यन्ति समुद्रं न स्रवतो रोधचक्राः।**
**स विद्वाँ उभयं चष्टे अन्तर्बृहस्पतिस्तर आपश्च गृध्रः ॥७॥**

भूस्वामीलाई असल भूमि प्राप्त हुँदा वा भुमरी पर्ने समुद्रलाई नदीको मिठो पानी प्राप्त हुँदा जस्तो आनन्द लाग्छ, त्यस्तै आनन्द असल वाणीयुक्त स्तोत्र पाउँदा बृहस्पतिलाई लाग्दछ। सुखका अभिलाषी, ज्ञानवान् बृहस्पतिदेव तट र जल दुवै हेर्दछन्।

**एवा महस्तुविजातस्तुविष्मान्बृहस्पतिर्वृषभो धायि देवः।**
**स नः स्तुतो वीरवद्धातु गोमद्विद्यामेषं वृजनं जीरदानुम् ॥८॥**

प्रख्यात, शक्तिशाली, महिमायुक्त, सुखदायक बृहस्पतिदेवलाई हामी सधैं प्रार्थना गर्छौं। उनले वीर सन्तानसहित गाई आदि धन प्रदान गरून्। प्राप्त गर्न योग्य, शक्तिले सम्पन्न र तेजस्वी देवताका ज्ञानले हामी सबै सम्पन्न बनौं।

[सूक्त - १९१]

ऋषि – अगस्त्य मैत्रावरुणि। देवता – अप्तृण सूर्या। छन्द – अनुष्टुप् महापंक्ति।

**कङ्कतो न कङ्कतोऽथो सतीनकङ्कतः।**
**द्वाविति प्लुषी इति न्यऽदृष्टा अलिप्सत ॥१॥**

कुनै बिखालु, कुनै विषरहित, कुनै पानीमा बस्ने कम बिखालु प्राणी हुन्छन्। यी देखिने पनि हुन्छन् र नदेखिने पनि हुन सक्छन्। यस्ता दुवै खालका प्राणीले शरीरमा दुःख दिन्छन्। तिनीहरूको विष हामीभित्र फैलिन्छ।

**अदृष्टान्हन्त्यायत्यथो हन्ति परायती।**
**अथो अवघ्नती हन्त्यथो पिनष्टि पिंषती ॥२॥**

औषधिले अदृश्य जीवको विष समाप्त गर्दछ। कुटिएको, पिँधिएको औषधिले बिखालु प्राणीका विष नष्ट गर्दछ।

**शरासः कुशरासो दर्भासः सैर्या उत।**
**मौञ्जा अदृष्टा वैरिणाः सर्वे साकं न्यलिप्सत ॥३॥**

बिखालु जीवहरूमध्ये कुनै काँसमा, कुनै कुशमा, कुनै सिरुमा रहन्छन्। कुनै नदी, पोखरीका किनारमा उम्रने घाँसमा, कुनै अन्य बोटबिरुवामा, कुनै वीरण नामका घाँसमा लुकेका हुन्छन्। यी सबै टोकिने खालका हुन्छन्।

**नि गावो गोष्ठे असदन्नि मृगासो अविक्षत।**
**नि केतवो जनानां न्यऽदृष्टा अलिप्सत ॥४॥**

गाई अथवा अन्य पशुहरू आआफ्ना थलामा विश्राम गर्दा र मानिस थाकेर थान्को लागेका बेला यस्ता अदृश्य जीवहरू बाहिर निस्कन्छन् र उनीहरूमा बेरिन्छन्।

**एत उ त्ये प्रत्यदृश्रन्प्रदोषं तस्कराइव। अदृष्टा विश्वदृष्टाः प्रतिबुद्धा अभूतन ॥**

चोरजस्ता बिखालु कीटाणु राति देखा पर्दछन्। आफू अदृश्य भए पनि यिनले अरूलाई देख्दछन्। हे मानिसहरू हो ! यिनीहरूबाट सावधान होओ।

**द्यौर्वः पिता पृथिवी माता सोमो भ्रातादितिः स्वसा।**
**अदृष्टा विश्वदृष्टास्तिष्ठतेलयता सु कम् ॥६॥**

हे बिखालु अणुहरू हो ! तिम्रा पिता दिव्यलोक, जन्मदातृ पृथ्वी, सोम दाजु र देवमाता अदिति दिदीजस्ता हुन्। त्यसैले आफू नदेखिने भए पनि तिमीहरू सबैलाई देख्छौ। त्यसो हुँदा तिमीहरू कसैलाई नसताईकन सुखपूर्वक विचरण गर।

**ये अंस्या ये अङ्ग्याः सूचीका ये प्रकङ्कताः।**
**अदृष्टाः किं चनेह वः सर्वे साकं नि जस्यत ॥७॥**

ढाडका सहाराले घिस्रँदै हिँड्ने, खुट्टाका बलले हिँड्ने, सियोले झैं घोच्ने, अति विष भएका र नदेखिने यी सबै बिखालु जीवले एकै साथ हामीलाई दुःख नदिऊन्।

**उत्पुरस्तात्सूर्य एति विश्वदृष्टो अदृष्टहा।**
**अदृष्टान्त्सर्वाञ्जम्भयन्त्सर्वाश्च यातुधान्यः ॥८॥**

सबैले देख्ने र अदृश्य दोषको विकृति नाश गर्ने सूर्यदेव पूर्व दिशामा उदाउँछन्। उनी सबै अदृश्य प्राणी र कुटिल चाल चल्ने सबै राक्षसी तत्त्वलाई हटाउँदै प्रकट हुन्छन्।

**उदपप्तदसौ सूर्यः पुरु विश्वानि जूर्वन्।**
**आदित्यः पर्वतेभ्यो विश्वदृष्टो अदृष्टहा ॥९॥**

अनेकौं अदृश्य जन्तु विनाश गर्दै सर्वद्रष्टा सूर्यदेव माथि उद्दछन्। यिनको उदय भएपछि अनिष्टकारी बिखालु जीवहरू सबै लुक्न थाल्दछन्।

**सूर्ये विषमा सजामि दृतिं सुरावतो गृहे। सो चिन्नु न**
**मराति नो वयं मरामारे अस्य योजनं हरिष्ठा मधु त्वा मधुला चकार ॥१०॥**

भाँडामा नसालु पदार्थ राखेझैं हामी विष घाममा राख्दछौं। त्यस विषले सूर्यदेवलाई प्रभाव पार्दैन तर हाम्रा लागि सूर्य विषनिवारक सिद्ध हुन्छन्। अश्वमा चढेका सूर्यदेव त्यो विष निवारण गर्दछन् र मधुला विद्याले विषलाई अमृत बनाउँछन्।

इयत्तिका शकुन्तिका सका जघास ते विषम्। सो चिन्नु न
मराति नो वयं मरामारे अस्य योजनं हरिष्ठा मधु त्वा मधुला चकार ॥११॥

कपिञ्जली नामका चरीले त्यो विष खाओस्। त्यसबाट ऊ पनि नमरोस् र हाम्रा लागि पनि विषको प्रभाव समाप्त गराओस्। त्यसो भएपछि मधुला शक्ति विषबाट हुने मृत्यु टार्न सक्ने सिद्ध हुनेछ।

त्रिः सप्त विष्पुलिङ्गका विषस्य पुष्यमक्षन्। ताश्चिन्नु न मरन्ति
नो वयं मरामारे अस्य योजनं हरिष्ठा मधु त्वा मधुला चकार ॥१२॥

बिखालु फल खाने सानातिना चरीहरू एक्काईस किसिमका छन्। तर तिनीहरू विषले प्रभावित हुँदैनन्। यसै गरी हामी पनि विषबाट मृत्युरहित होऔँ। अश्वारूढ सूर्यले यो विष निवारण गरिदिएका छन्। मधुला विद्याले विषलाई अमृतमा बदलिदिन्छ।

नवानां नवतीनां विषस्य रोपुषीणाम्।
सर्वासामग्रभं नामारे अस्य योजनं हरिष्ठा मधु त्वा मधुला चकार ॥१३॥

विष निवारण गर्ने उनान्सय किसिमका औषधि हामी सबैले जानेका छौँ। तिनीहरूको उपयोगबाट सबै खालका विष निवारण हुन्छन्। अश्वारूढ, सूर्यले विष निवारण गरुन् र मधुला शक्तिले विषलाई अमृत बनाऊन्।

त्रिः सप्त मयूर्यः सप्त स्वसारो अग्रुवः।
तास्ते विषं वि जभ्रिर उदकं कुम्भिनीरिव ॥१४॥

हे विषबाट पीडित प्राणीहरू हो ! आइमाईले घैँटामा पानी ल्याएझैँ एक्काईस पोथी मयुर तथा दिदीबहिनीजस्ता सात नदीहरूले तिम्रो विष निवारण गरुन्।

इयत्तकः कुषुम्भकस्तकं भिनद्म्यश्मना।
ततो विषं प्र वावृते पराचीरनु संवतः ॥१५॥

यो बिखालु किरो अति सानो छ, यस्ता साना किराहरू हामीतिर आए भने हामी ढुङ्गाले कुच्याएर मारिदिन्छौँ। तिनको विष अर्कै दिशामा जाओस्।

कुषुम्भकस्तदब्रवीद्गिरेः प्रवर्तमानकः।
वृश्चिकस्यारसं विषमरसं वृश्चिक ते विषम् ॥१६॥

पहाडबाट आउने न्याउरीले बिच्छीको विष प्रभावहीन पार्छ। त्यसपछि ऊ हे बिच्छी ! तेरा विषमा प्रभाव नै छैन भन्दछ।

॥इति प्रथमं मण्डलम्॥
पहिलो मण्डल सकियो

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ द्वितीयं मण्डलम्॥

॥दोस्रो मण्डल॥

[सूक्त - १]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - अग्नि। छन्द - जगती।

**त्वमग्ने द्युभिस्त्वमाशुशुक्षणिस्त्वमद् भ्यस्त्वमश्मनस्परि।**
**त्वं वनेभ्यस्त्वमोषधीभ्यस्त्वं नृणां नृपते जायसे शुचिः ॥१॥**

हे मनुष्यका स्वामी अग्निदेव ! तिमी द्युलोकबाट प्रकट भएपछि तुरुन्तै प्रकाशित भएकाले पवित्र छौ। तिमी जल, ढुङ्गा, वन र औषधिबाट उत्पन्न हुन्छौ।

**तवाग्ने होत्रं तव पोत्रमृत्वियं तव नेष्ट्रं त्वमग्निदृतायतः।**
**तव प्रशास्त्रं त्वमध्वरीयसि ब्रह्मा चासि गृहपतिश्च नो दमे ॥२॥**

हे अग्निदेव ! ऋत्विक्हरूमा तिमी नै होता, पोता, नेष्टा, आग्नीध्र हौ। तिमी नै यज्ञको कामन गर्ने प्रशास्ता, अध्वर्यु र ब्रह्मा हौ। यज्ञकर्ता गृहपति पनि तिमी नै हौ।

**त्वमग्न इन्द्रो वृषभः सतामसि त्वं विष्णुरुरुगायो नमस्यः।**
**त्वं ब्रह्मा रयिविद्ब्रह्मणस्पते त्वं विधर्तः सचसे पुरन्ध्या ॥३॥**

हे अग्निदेव ! तिमी सज्जनहरूलाई प्रभावशाली नेतृत्व प्रदान गर्ने इन्द्र हौ। तिमी नै सबैका स्तुत्य, सर्वव्यापी विष्णु हौ। हे ज्ञानसम्पन्न अग्निदेव ! तिमी उत्तम ऐश्वर्यले युक्त ब्रह्मा हौ। विभिन्न प्रकारले बुद्धि धारण गरेका तिमी मेधावी हौ।

**त्वमग्ने राजा वरुणो धृतव्रतस्त्वं मित्रो भवसि दस्म ईड्यः।**
**त्वमर्यमा सत्पतिर्यस्य सम्भुजं त्वमंशो विदथे देव भाजयुः ॥४॥**

हे अग्निदेव ! तिमी व्रत धारण गर्ने राजा वरुण हौ। दुष्टको नाश गर्ने र सबैले स्तुति गरिने मित्रदेवता पनि तिमी नै हौ। दान दिने, सर्वव्यापी र सर्वपालक अर्यमा तिमी नै हौ। सूर्य तिमी नै हौ, त्यसैले हे अग्निदेव ! दिव्य गुणले युक्त अभीष्ट फल हामीलाई प्रदान गर।

**त्वमग्ने त्वष्टा विधते सुवीर्यं तव ग्नावो मित्रमहः सजात्यम्।**
**त्वमाशुहेमा ररिषे स्वश्व्यं त्वं नरां शर्धो असि पुरूवसुः ॥५॥**

हे अग्निदेव ! साधकका लागि तिमी श्रेष्ठ पराक्रम प्रदान गर्ने त्वष्टादेव हौ। सबै स्तुतिहरू तिम्रै लागि हुन्। तिमी हाम्रा मित्र र सजातीय हौ। तिमी चाँडै नै उत्तम ऐश्वर्य प्रदान गर्ने हौ। हे अग्निदेव ! तिमी मनुष्यलाई आश्रय प्रदान गर्ने महान् बली हौ।

**त्वमग्ने रुद्रो असुरो महो दिवस्त्वं शर्धो मारुतं पृक्ष ईशिषे।**
**त्वं वातैररुणैर्यासि शङ्गयस्त्वं पूषा विधतः पासि नु त्मना ॥६॥**

हे अग्निदेव ! तिमी द्युलोकका प्राणदाता रुद्र हौ। अन्नका अधिपति तथा मरुत्हरूका बल हौ। तिमी वायुसमान शीघ्रगामी अश्वमा आरूढ भएर, कल्याणको कामनाले गृहस्वामीकहाँ जान्छौ। तिमी पोषणकर्ता पूषादेव हौ, त्यसैले तिमी स्वयं नै मनुष्यको रक्षा गर्दछौ।

**त्वमग्ने द्रविणोदा अरङ्कृते त्वं देवः सविता रत्नधा असि।**
**त्वं भगो नृपते वस्व ईशिषे त्वं पायुर्दमे यस्तेऽविधत् ॥७॥**

हे अग्निदेव ! प्रज्वलित गर्नेहरूलाई तिमी धन प्रदान गर्दछौ। तिमी रत्न धारण गर्ने सवितादेव हौ। हे प्रजापालक अग्निदेव ! तिमी नै धनको अधिपति भग हौ। जसले आफ्ना घरमा तिमीलाई प्रज्वलित गराइराख्दछ, तिमी त्यसलाई रक्षा गर।

**त्वामग्ने दम आ विश्पतिं विशस्त्वां राजानं सुविदत्रमृञ्जते।**
**त्वं विश्वानि स्वनीक पत्यसे त्वं सहस्राणि शता दश प्रति ॥८॥**

हे प्रजापालक अग्निदेव ! प्रजाले आफ्ना घरमा प्रकाशमान तथा ज्ञानयुक्त अग्निका रूपमा

तिमीलाई प्राप्त गरेका छन्। हे सुन्दर ज्वालायुक्त अग्निदेव ! तिमी सम्पूर्ण विश्वका स्वामी हौ र लाखौं किसिमका फल प्रदान गर्दछौ।

**त्वामग्ने पितरमिष्टिभिर्नरस्त्वां भ्रात्राय शम्या तनूरुचम्।**
**त्वं पुत्रो भवसि यस्तेऽविधत्त्वं सखा सुशेवः पास्याधृषः ॥९॥**

हे अग्निदेव ! तिमी मनुष्यका पितृ हौ। मानिसहरू यज्ञद्वारा तिमीलाई तृप्त गराउँछन्। तिमी शरीर तेजस्वी बनाइदिन्छौ, त्यसो हुनाले भ्रातृत्व प्राप्त गर्नका लागि मानिसहरू तिमीलाई प्रसन्न गराउँछन्। सेवा गर्नुपर्नेहरूका लागि तिमी पुत्र बनिदिन्छौ। तिमी मित्र, हितैषि र विघ्ननाशक बनेर हाम्रो रक्षा गर।

**त्वमग्न ऋभुराके नमस्य१स्त्वं वाजस्य क्षुमतो राय ईशिषे।**
**त्वं वि भास्यनु दक्षि दावने त्वं विशिक्षुरसि यज्ञमातनिः ॥१०॥**

हे अग्निदेव ! तिम्रो अत्यन्त तेजस्वी स्वरूप नजिकैबाट पनि स्तुति गर्न योग्य छ। तिमी प्रचुर अन्न आदि भोग्य सामग्रीयुक्त बलका स्वामी हौ र काठ जलाउँदै प्रकाशित हुन्छौ। तिमी दान दिनेहरूको यज्ञ पूर्ण गर्दछौ।

**त्वमग्ने अदितिर्देव दाशुषे त्वं होत्रा भारती वर्धसे गिरा।**
**त्वमिळा शतहिमासि दक्षसे त्वं वृत्रहा वसुपते सरस्वती ॥११॥**

हे अग्निदेव ! तिमी दान दिनेहरूका लागि अदिति हौ। वाणीरूपी स्तुतिले विस्तृत भएका कारण होता र भारती हौ। सयौं वर्षको आयु प्रदान गर्न सक्षम हुनाले इडा हौ। हे धनका स्वामी अग्निदेव ! तिमी वृत्रहन्ता र सरस्वती हौ।

**त्वमग्ने सुभृत उत्तमं वयस्तव स्पार्हे वर्ण आ सन्दृशि श्रियः।**
**त्वं वाजः प्रतरणो बृहन्नसि त्वं रयिर्बहुलो विश्वतस्पृथुः ॥१२॥**

हे अग्निदेव ! तिमी सबैभन्दा ठूलो पोषक अन्न हौ। तिमीबाट नै स्वीकार गर्न योग्य र दर्शनीय ऐश्वर्य प्राप्त हुन्छ। तिमी सधैं बढिरहने र महान् छौ। तिमी प्रचुर अन्न एवं ऐश्वर्य प्रदान गर्दछौ।

**त्वामग्न आदित्यास आस्य१ं त्वां जिह्वां शुचयश्चक्रिरे कवे।**
**त्वां रातिषाचो अध्वरेषु सश्चिरे त्वे देवा हविरदन्त्याहुतम् ॥१३॥**

हे दूरदर्शी अग्निदेव ! तिमी आदित्यहरूका मुख हौ। पवित्र देवगणका लागि तिमी जिह्वारूप हौ। दानशील देवगणले यज्ञमा तिम्रै आश्रय पाउँछन् र तिमीलाई अर्पित गरिएको आहुति ग्रहण गर्दछन्।

**त्वे अग्ने विश्वे अमृतासो अद्रुह आसा देवा हविरदन्त्याहुतम्।**
**त्वया मर्तासः स्वदन्त आसुतिं त्वं गर्भो वीरुधां जज्ञिषे शुचिः ॥१४॥**

हे अग्निदेव ! आपसमा झगडा नगर्ने, अमरत्व पाएका सबै देवताहरू तिम्रा मुखबाट नै हविष्यान्न ग्रहण गर्दछन्। तिम्रो आश्रय पाएर नै मानिसले अन्न आदि ग्रहण गर्दछन्। हे अग्निदेव ! तिमी रुखबिरुवा र वनस्पतिमा उर्जाका रूपमा विद्यमान रहेर अन्न आदि उत्पन्न गराउँछौ।

**त्वं तान्त्सं च प्रति चासि मज्मनाग्ने सुजात प्र च देव रिच्यसे।**
**पृक्षो यदत्र महिना वि ते भुवदनु द्यावापृथिवी रोदसी उभे ॥१५॥**

हे अग्निदेव ! तिमी आफ्ना शक्तिले देवगणसित संयुक्त एवं पृथक् हुन्छौ र आफ्ना महान् गुणका कारणले नै देवगणमा सबैभन्दा ठूला छौ। तिमीलाई अर्पित गरिएको जुनसुकै अन्न द्युलोक र पृथ्वीलोकमा विस्तृत गराउँछौ।

**ये स्तोतृभ्यो गोअग्रामश्वपेशसमग्ने रातिमुपसृजन्ति सूरयः।**
**अस्माञ्च तांश्च प्र हि नेषि वस्य आ बृहद्वदेम विदथे सुवीराः ॥१६॥**

हे अग्निदेव ! ज्ञानी स्तोतालाई गाई र घोडा आदि पशु दान गर्दछौ। दानीहरूका साथै हामीलाई पवित्र स्थलमा शीघ्र लगिदेऊ। हामी वीर सन्तानका साथै यज्ञमा उत्तम स्तुति गर्दछौं।

## [सूक्त – २]

**ऋषि** – गृत्समद भार्गव शौनक। **देवता** – अग्नि। **छन्द** – जगती।

**यज्ञेन वर्धत जातवेदसमग्निं यजध्वं हविषा तना गिरा।**
**समिधानं सुप्रयसं स्वर्णरं द्युक्षं होतारं वृजनेषु धूर्षदम् ॥१॥**

हे याज्ञिकहरू हो ! समिधाबाट प्रज्वलित हुने, उत्पन्न पदार्थहरूका ज्ञाता, उत्तम अन्न सम्पदाले

युक्त, सुखपूर्वक उद्देश्यसम्म पुऱ्याउने, सङ्ग्राममा बल प्रदान गर्ने र होतारूपी अग्निदेवलाई विस्तृत गराओ र हविष्यात्र समर्पित गरेर स्तुतिसहित पूजा गर।

**अभि त्वा नक्तीरुषसो ववाशिरेऽग्ने वत्सं न स्वसरेषु धेनवः।**
**दिवइवेदरतिर्मानुषा युगा क्षपो भासि पुरुवार संयतः ॥२॥**

हे अग्निदेव ! गाईले आफ्नो बाछो खोजेझैँ रातोदिन हामी तिमीलाई नै खोज्दछौँ। धेरैले रुचाइएका तिमी सबै किसिमले समर्थ भएर द्युलोकजत्तिकै विस्तृत हुन्छौ। युगौँदेखि तिमी मनुष्यका नजिकै छौ र दिउँसोजस्तै रातमा पनि प्रकाशित हुन्छौ।

**तं देवा बुध्ने रजसः सुदंससं दिवस्पृथिव्योररतिं न्येरिरे।**
**रथमिव वेद्यं शुक्रशोचिषमग्निं मित्रं न क्षितिषु प्रशंस्यम् ॥३॥**

असल कर्म गर्ने, द्युलोक र पृथिवीलोकमा व्याप्त, असल ऐश्वर्यले युक्त रथका धनी, तेजस्वी ज्वालाले सम्पन्न, प्रजाहरूमा सर्वश्रेष्ठ, मित्रजस्तै प्रशंसनीय, अग्निदेवलाई देवगण सबै लोकमा स्थापित गराउँछन्।

**तमुक्षमाणं रजसि स्व आ दमे चन्द्रमिव सुरुचं ह्वार आ दधुः।**
**पृश्न्याः पतरं चितयन्तमक्षभिः पाथो न पायुं जनसी उभे अनु ॥४॥**

अन्तरिक्षबाट वर्षा गराउने, चन्द्रमाजस्तै उत्तम कान्तियुक्त, पृथ्वीमा सर्वत्र गमनशील, ज्वालामा देखिने, द्युलोक र पृथ्वीलोकमा पुलझैँ व्याप्त अग्निदेवलाई आफ्ना घरमा एकान्त स्थानमा मानिसहरू स्थापित गर्दछन्।

**स होता विश्वं परि भूत्वध्वरं तमु हव्यैर्मनुष ऋञ्जते गिरा।**
**हिरिशिप्रो वृधसानासु जर्भुरद्द्यौर्न स्तृभिश्चितयद्रोदसी अनु ॥५॥**

अग्निदेव होताका रूपमा सम्पूर्ण यज्ञस्थलमा सबै तिरबाट व्याप्त हुन्छन्। याजकहरू उनलाई हविष्यात्र र स्तुतिले अलङ्कृत गर्दछन्। नक्षत्रहरूले आकाश उज्यालो पारेझैँ समिधाका बीचमा तेजस्वी ज्वाला बढ्दै अग्निदेव द्यावापृथिवीलाई उज्यालो पार्छन्।

**स नो रेवत्समिधानः स्वस्तये सन्ददस्वान्रयिमस्मासु दीदिहि।**
**आ नः कृणुष्व सुविताय रोदसी अग्ने हव्या मनुषो देव वीतये ॥६॥**

हे अग्निदेव ! हाम्रा लागि कल्याणकारी ऐश्वर्य प्रदान गर्दै दीप्तिमान भइदेऊ। द्युलोक र पृथ्वीलाई हाम्रा लागि सुखदायी गराऊ र मानिसले प्रदान गरेको हविष्यात्र देवताकहाँ पुऱ्याइदेऊ।

**दा नो अग्ने बृहतो दाः सहस्रिणो दुरो न वाजं श्रुत्या अपा वृधि।**
**प्राची द्यावापृथिवी ब्रह्मणा कृधि स्व१र्ण शुक्रमुषसो वि दिद्युतुः ॥७॥**

हे अग्निदेव ! हामीलाई हजारौँ किसिमका विभूति मनग्गे मात्रामा देऊ। कीर्ति आर्जन हुने गरी अन्न प्राप्त गर्ने मार्ग देखाइदेऊ। उषाहरूले तिमीलाई आदित्यजत्तिकै उज्यालो पार्दछन्। त्यसैले द्युलोक र पृथ्वीलाई ज्ञानका माध्यमबाट हाम्रो अनुकूल गराइदेऊ।

**स इधान उषसो राम्या अनु स्व१र्ण दीदेदरुषेण भानुना।**
**होत्राभिरग्निर्मनुषः स्वध्वरो राजा विशामतिथिश्चारुरायवे ॥८॥**

उषाकाल समाप्तिपछि प्रज्वलित अग्निदेव आफ्ना तेजले प्रकाशित हुन्छन्। ठूला याज्ञिक र प्रजाप्रेमी राजाजस्ता अग्निदेव मानिसका स्तुतिले प्रशंसित र प्रिय अतिथिझैँ पूजित हुन्छन्।

**एवा नो अग्ने अमृतेषु पूर्व्य धीष्पीपाय बृहद्दिवेषु मानुषा।**
**दुहाना धेनुर्वृजनेषु कारवे त्मना शतिनं पुरुरूपमिषणि ॥९॥**

हे अग्निदेव ! तिमी अत्यन्त तेजस्वी देवताहरूमा पनि सर्वश्रेष्ठ छौ। मानव समुदायका बीचमा तिमी स्तुतिले तृप्त हुन्छौ। याजकहरूका लागि तिमी कामधेनुजस्तै असङ्ख्य किसिमका धन प्रदान गर्दछौ।

**वयमग्ने अर्वता वा सुवीर्यं ब्रह्मणा वा चितयेमा जनाँ अति।**
**अस्माकं द्युम्नमधि पञ्च कृष्टिषूच्चा स्व१र्ण शुशुचीत दुष्टरम् ॥१०॥**

हे अग्निदेव ! हामी पराक्रम र ज्ञानका माध्यमबाट समर्थ बनेर मानव समुदायमा उत्तम हुन सकौँ। उच्च स्तरीय, अनन्त र अर्काले पाउन नसकेको धन समाजका पाँचै वर्णमा सूर्यले किरण पुऱ्याइदिएझैँ हामी पुऱ्याउन सकौँ।

स नो बोधि सहस्य प्रशंस्यो यस्मिन्त्सुजाता इषयन्त सूरयः ।
यमग्ने यज्ञमुपयन्ति वाजिनो नित्ये तोके दीदिवांसं स्वे दमे ॥११॥

हे बलशाली अग्निदेव ! उत्तम कुलमा जन्मिएका ज्ञानीहरू यज्ञमा अन्नको कामना गर्दछन्। हामीजस्ता धनधान्यले सम्पन्न मानिसको इच्छा तिमीले जान्दछौ। प्रशंसनीय, पूजनीय र तेजस्वी हुनाले तिमीलाई सबैले आफ्ना घरमा प्रज्वलित गराउँछन्।

उभयासो जातवेदः स्याम ते स्तोतारो अग्ने सूरयश्च शर्मणि ।
वस्वो रायः पुरुश्चन्द्रस्य भूयसः प्रजावतः स्वपत्यस्य शग्धि नः ॥१२॥

हे ज्ञान उत्पत्ति गराउने अग्निदेव ! हामी ज्ञानी स्तोताहरू तिमीसँग दुवै किसिमका सुखको कामना गर्दै तिमीमाथि आश्रित भएका छौं। तिमी हाम्रा लागि उत्तम सन्तान, बस्न योग्य वास आदि असल सम्पत्ति प्रदान गर।

ये स्तोतृभ्यो गोऽग्रामश्वपेशसमग्ने रातिमुपसृजन्ति सूरयः ।
अस्माञ्च तांश्च प्र हि नेषि वस्य आ बृहद्वदेम विदथे सुवीराः ॥१३॥

हे अग्निदेव ! ज्ञानी स्तोतालाई राम्रा गाई र बलिया घोडासहितको धन तिमी प्रदान गर्दछौ। त्यसै गरी हामीलाई पनि गतिलो ऐश्वर्य प्रदान गर। यज्ञमा वीर सन्तानयुक्त भएर हामी तिम्रो स्तुति गरौं।

[सूक्त - ३]

**ऋषि** – गृत्समद भार्गव शौनक। **देवता** – अग्नि त्वष्टा वनस्पति। **छन्द** – जगती।

समिद्धो अग्निर्निहितः पृथिव्यां प्रत्यङ्विश्वानि भुवनान्यस्थात् ।
होता पावकः प्रदिवः सुमेधा देवो देवान्यजत्वग्निरर्हन् ॥१॥

प्रदीप्त अग्निदेव पृथ्वीमा स्थापित भएर समस्त लोकमा व्याप्त हुन्छन्। असल बुद्धि भएका, पवित्रता प्रदान गर्ने, हविष्यान्न ग्रहण गर्ने र तेजस्वी अग्निदेवको पूजा गरौं।

नराशंसः प्रति धामान्यञ्जन् तिस्रो दिवः प्रति मह्ना स्वर्चिः ।
घृतप्रुषा मनसा हव्यमुन्दन्मूर्धन्यज्ञस्य समनक्तु देवान् ॥२॥

पृथिवी, अन्तरिक्ष र आकाश तीनै लोकलाई सबैबाट स्तुति गरिने अग्निदेवले प्रकाशित गराउँदै स्नेहयुक्त मनले हविष्यान्न ग्रहण गर्दछन्। उनी यज्ञस्थलमा आफ्नो दिव्य प्रभाव प्रकट गराउँछन्।

ईळितो अग्ने मनसा नो अर्हन्देवान्यक्षि मानुषात्पूर्वो अद्य ।
स आ वह मरुतां शर्धो अच्युतमिन्द्रं नरो बर्हिषदं यजध्वम् ॥३॥

हे पूज्य अग्निदेव ! हाम्रो हितका लागि, पूजा स्वीकार गरेर मनुष्यले भन्दा पहिले तिमी असल मनले देवताको पूजा गर। हे अग्निदेव ! सामर्थ्यवान् मरुत्‌देव र परास्त नहुने इन्द्रदेवलाई हामीकहाँ ल्याइदेऊ। हे मानिस हो ! यज्ञस्थलमा स्थापित अग्निदेवको उपासना गर।

देव बर्हिर्वर्धमानं सुवीरं स्तीर्णं राये सुभरं वेद्यस्याम् ।
घृतेनाक्तं वसवः सीदतेदं विश्वे देवा आदित्या यज्ञियासः ॥४॥

हे कुशमा स्थित अग्निदेव ! तिमी यज्ञकुण्डमा बढिरहन्छौ, हामीलाई वीर सन्तान र उच्च स्तरको धन प्रदान गर। हे वसु, आदित्य र विश्वदेवहरू हो ! घिउले सिञ्चित एवं ओछ्याइएका कुशमाथि तिमीहरू बस।

वि श्रयन्तामुर्विया हूयमाना द्वारो देवीः सुप्रायणा नमोभिः ।
व्यचस्वतीर्वि प्रथन्तामजुर्या वर्णं पुनाना यशसं सुवीरम् ॥५॥

नमस्कारपूर्वक आह्वान गरिने, विस्तृत सुखदायी, दिव्य द्वारजस्ता, मानिसले सम्बन्ध गाँस्न खोज्ने, मानिसका आश्रय, कहिल्यै वृद्ध नहुने यी अग्निदेव सुसन्तान र सुयश प्रदान गर्दै सधैं विकासशील रहून्।

साध्वपांसि सनता न उक्षिते उषासानक्ता वय्येव रण्विते ।
तन्तुं ततं संवयन्ती समीची यज्ञस्य पेशः सुदुघे पयस्वती ॥६॥

यज्ञका स्वरूपलाई सुन्दरता प्रदान गर्ने यी उषा र नक्ता देवीहरू लुगा बुनेको जस्तो शब्द गर्दछन् र हाम्रा उत्तम कर्ममा प्रेरणा जगाउँदै पूजित हुन्छन्। यी देवीहरू तानिएको धागाको तान बुन्दै उत्तम गतिमा लाग्न हामीलाई योग्य बनाउँछन् र सबै किसिमका कामना पूरा गराउँदै अन्न र दुध आदिले परिपूर्ण गराउँछन्।

दैव्या होतारा प्रथमा विदुष्टर ऋजु यक्षतः समृचा वपुष्टरा।
देवान्यजन्तावृतुथा समञ्जतो नाभा पृथिव्या अधि सानुषु त्रिषु ॥७॥

दिव्य होताहरू अग्रणी, विद्वान् र रूपवान् छन्। उनीहरू ऋचाको माध्यमबाट सरलतापूर्वक देवयज्ञ सम्पन्न गर्दछन्। पृथ्वीकेन्द्रमा उनीहरू तीनै एकत्रित हुन्छन्।

सरस्वती साधयन्ती धियं न इडा देवी भारती विश्वतूर्तिः।
तिस्रो देवीः स्वधया बर्हिरेदमच्छिद्रं पान्तु शरणं निषद्य ॥८॥

अनेकौं सद्‌गुणहरूले सम्पन्न इडा, भारती र सरस्वती यी तीन देवीहरू हाम्रा यस यज्ञमा उपस्थित रहेर आआफ्ना धारणाशक्तिबाट यस यज्ञलाई संरक्षित गरुन्।

पिशङ्गरूपः सुभरो वयोधाः श्रुष्टी वीरो जायते देवकामः।
प्रजां त्वष्टा वि ष्यतु नाभिमस्मे अथा देवानामप्येतु पाथः ॥९॥

अग्निरूपी त्वष्टादेवले हामीलाई श्रेष्ठ सन्तान प्रदान गरुन्। त्यो सन्तान सुनौलो कान्ति भएको, अत्यन्त हृष्टपुष्ट, अन्न र पराक्रम धारण गर्ने, लामो आयु भएको, वीर, असल बुद्धिमान्, गुणको कामना गर्ने र देवताहरूले देखाएका बाटामा लाग्ने पुत्र होस्।

वनस्पतिरवसृजन्नुप स्थादग्निर्हविः सूदयाति प्र धीभिः।
त्रिधा समक्तं नयतु प्रजानन्देवेभ्यो दैव्यः शमितोप हव्यम् ॥१०॥

वनस्पतिबाट आफ्नो प्रकाश फैलाउँदै अग्निदेव हामीकहाँ आएर स्थिर होऊन्। यी अग्निदेव आफ्ना शक्तिले हविष्यान्न पकाउँछन्। दिव्य गुणसम्पन्न र शान्त स्वभाव भएका अग्निदेवले तीन प्रकारले तयार हविष्यान्न देवताकहाँ पुऱ्याऊन्।

घृतं मिमिक्षे घृतमस्य योनिर्घृते श्रितो घृतम्वस्य धाम।
अनुष्वधमा वह मादयस्व स्वाहाकृतं वृषभ वक्षि हव्यम् ॥११॥

अग्निदेवको मुख्य आश्रयस्थल घिउ हो। त्यसैले यिनलाई घिउले सिञ्चित गरिन्छ। हे बलशाली अग्निदेव ! स्नेहपूर्वक समर्पित गरिएको आहुति सबै देवतालाई पुऱ्याइएर प्रसन्न गराऊ।

[सूक्त - ४]

ऋषि – सोमाहुति भार्गव। देवता – अग्नि। छन्द – त्रिष्टुप्।

हुवे वः सुद्योत्मानं सुवृक्तिं विशामग्निमतिथिं सुप्रयसम्।
मित्रइव यो दिधिषाय्यो भूद्देव आदेवे जने जातवेदाः ॥१॥

हे याजकहरू हो ! दिव्य गुणसम्पन्न, उत्पन्न भएका सबै पदार्थका ज्ञाता र मानिसदेखि देवतासम्मका लागि अग्निदेव सूर्यजस्तै आधार हुन्। प्रकाशित, पापनाशक, अतिथिझैं पूज्य र सबैलाई प्रसन्न गराउने अग्निदेवलाई हामी आह्वान गर्दछौं।

इमं विधन्तो अपां सधस्थे द्वितादधुर्भृगवो विक्ष्वाश्योः।
एष विश्वान्यभ्यस्तु भूमा देवानामग्निररतिर्जीराश्वः ॥२॥

अग्निविद्याको ज्ञान हुनेहरूले विशेष उपायले अन्तरिक्षका जलमा र पृथ्वीवासी मानिसका बीचमा अग्निदेवलाई स्थापित गराए। समस्त ऐश्वर्य र द्रुतगामी अश्वका स्वामी अग्निदेवले सबै सामर्थ्यवान् शत्रु परास्त गरुन्।

अग्निं देवासो मानुषीषु विक्षु प्रियं धुः क्षेष्यन्तो न मित्रम्।
स दीदयदुशतीरूर्म्या आ दक्षाय्यो यो दास्वते दम आ ॥३॥

यात्रामा जाने मानिसले आफन्तलाई घरको हेरचाह गर्न खटाएझैं प्रिय तथा हितकारी अग्निदेवलाई देवताहरूले मानव प्रजाका बीचमा स्थापित गराए।

अस्य रण्वा स्वस्येव पुष्टिः सन्दृष्टिरस्य हियानस्य दक्षोः।
वि यो भरिभ्रदोषधीषु जिह्वामत्यो न रथ्यो दोधवीति वारान् ॥४॥

काठ आदि भस्म गरेर बढ्ने अग्निदेवको तेज सबैका लागि स्वस्थ शरीरजस्तै आनन्द र रमाइलो लाग्ने हुन्छ। बोटबिरुवाले धारण गरेका अग्निदेवको ज्वाला रथमा नारिएका घोडाले पुछरका रौं हल्लाएझैं हल्लिँदै देखिन्छन्।

आ यन्मे अभ्वं वनदः पनन्तोशिग्भ्यो नामिमीत वर्णम्।
स चित्रेण चिकिते रंसु भासा जुजुर्वां यो मुहुरा युवा भूत् ॥५॥

अग्निदेवको महिमा गाउनेहरू र अग्निदेवको कामना गर्ने स्तोतालाई अग्निदेवले आफ्नो तेज प्रदान गर्दछन्। हव्य समर्पित गर्दा आफ्नो अति मनोहर स्वरूप देखाउँदै बारम्बार बुढो र तन्नेरी हुने गर्दछन्।

आ यो वना तातृषाणो न भाति वार्ण पथा रथ्येव स्वानीत्।
कृष्णाध्वा तपू रण्वश्चिकेत द्यौरिव स्मयमानो नभोभिः ॥६॥

तिर्खाएकाले पानी खाएझैं तीव्र गतिमा वन डढाउने अग्निदेव, रथ तान्ने घोडाको जस्तै शब्द गर्दछन्। कालो, ध्वाँसे बाटोबाट हिंड्ने, सबैलाई तताउने, रमणीय अग्निदेव आकाशमा नक्षहरूझैं सुन्दर देखिन्छन्।

स यो व्यस्थादभि दक्षदुर्वी पशुर्नैति स्वयुरगोपाः।
अग्निः शोचिष्माँ अतसान्युष्णन्कृष्णव्यथिरस्वदयन्न भूम ॥७॥

विभिन्न रूपले विश्वमा व्यापक भएर विशाल पृथ्वीका पदार्थ डढाउने तेजस्वी अग्निदेव दुःखदायी काँडा, सुकेका दाउरा, पातपतिङ्गर आदि आफ्ना ज्वालाले जलाउँदै गोठालो बिनाको छाडा पशुझैं जताततै जान्छन्।

नू ते पूर्वस्यावसो अधीतौ तृतीये विदथे मन्म शंसि।
अस्मे अग्ने संयद्वीरं बृहन्तं क्षुमन्तं वाजं स्वपत्यं रयिं दाः ॥८॥

हे अग्निदेव ! पहिलेपहिले तिमीले हाम्रो रक्षा गर्‍यौ, त्यसैले हामी फेरि दोहोर्‍याई तेहर्‍याई तिम्रो स्तोत्र उच्चारण गर्दै त्यसलाई स्मरण गर्दछौं। हे अग्निदेव ! हामीलाई तिमी असल धन र महान् कीर्तियुक्त सन्तान प्रदान गर।

त्वया यथा गृत्समदासो अग्ने गुहा वन्वन्त उपरौं अभि ष्युः।
सुवीरासो अभिमातिषाहः स्मत्सूरिभ्यो गृणते तद्वयो धाः ॥९॥

हे अग्निदेव ! गुफामा बसेका निरहङ्कारी स्तोता ऋषिलाई उत्तम सन्तान प्रदान गरेर तिमीले आफ्नो संरक्षण प्रदान गर्‍यौ। उसै गरी हामीले ज्ञानपूर्वक गरेका स्तुतिबाट हामीलाई उत्तम धन दिंदै संरक्षण प्रदान गर।

[सूक्त - ५]

ऋषि - सोमाहुति भार्गव। देवता - अग्नि। छन्द - अनुष्टुप्।

होताजनिष्ट चेतनः पिता पितृभ्य ऊतये।
प्रयक्षञ्जेन्यं वसु शकेम वाजिनो यमम् ॥१॥

शरीरमा चेतना उत्पन्न गराउने होता एवं पितारूपी अग्निदेव पितृको रक्षा गर्नका लागि उत्पन्न भएका थिए। हामीलाई पनि बलशाली, पूजनीय, रक्षासाधनले सम्पन्न र विजय गराउन सक्ने धन प्रदान गर्नका लागि यिनी समर्थ होऊन्।

आ यस्मिन्त्सप्त रश्मयस्तता यज्ञस्य नेतरि।
मनुष्वद्दैव्यमष्टमं पोता विश्वं तदिन्वति ॥२॥

यज्ञका नायकरूपी अग्निमा सात रश्मि व्याप्त छन्। पवित्र गराउने अग्निदेव मानिसझैं यज्ञका आठौं स्थानमा पूर्ण रूपले व्याप्त हुन्छन्।

दधन्वे वा यदीमनु वोचद्ब्रह्माणि वेरु तत्।
परि विश्वानि काव्या नेमिश्चक्रमिवाभवत् ॥३॥

अग्निदेवलाई लक्ष्य गरेर यस यज्ञमा मन्त्रोच्चारण गर्दै हविष्यान्न समर्पित गरिएको कुरो अग्निदेव जान्दछन्। धुराका चारैतिर चक्र घुमेझैं अग्निदेवका वरिपरि स्तुति घुम्दछन्।

साकं हि शुचिना शुचिः प्रशास्ता क्रतुनाजनि।
विद्वाँ अस्य व्रता ध्रुवा वयाइवानु रोहते ॥४॥

उत्तम शासन गर्ने अग्निदेव शुद्ध गराउने पवित्र कर्मका लागि उत्पन्न भए। अग्निदेवको सनातन स्वरूप जानेका व्यक्तिको उन्नति रुखका हाँगा बढेझैं निरन्तर हुन्छ र क्रमैसँग ऊ उच्च स्थानमा पुग्दछ।

ता अस्य वर्णमायुवो नेष्टुःसचन्त धेनवः ।
कुवित्तिसृभ्य आ वरं स्वसारो या इदं ययुः ॥५॥

नेतारूपी अग्निदेवका तीनै रूपलाई तेजस्वी गराउनका लागि दिदीबहिनीजस्ता औंलाले आपसी प्रेमपूर्वक प्रज्वलित गर्दछन्। अग्निदेवले मानिसलाई दुधालु गाईले झैं सुखी गराउँछन्।

यदी मातुरुप स्वसा घृतं भरन्त्यस्थित।
तासामध्वर्युरागतौ यवो वृष्टीव मोदते ॥६॥

मातारूपी वेदीका नजिकै दिदीबहिनीजस्ता औंलाहरूले घिउ भर्दछन्। अग्निदेवका नजिकै औंला पुग्दा अध्वर्युहरू वर्षाको पानी पाएको अन्नजस्तै प्रसन्न हुन्छन्।

स्वः स्वाय धायसे कृणुतामृत्विगृत्विजम्।
स्तोमं यज्ञं चादरं वनेमा ररिमा वयम् ॥७॥

अग्निदेव असल कार्यका निमित्त समाथ्र्य प्रदान गर्नका लागि ऋत्विक्जस्तै छन्। हामी ऋत्विक्रूपी अग्निदेवका निम्ति स्तोत्र उच्चारण गर्दै हविष्यान्न समर्पित गरौं।

यथा विद्वाँ अरङ्करद्विश्वेभ्यो यजतेभ्यः ।
अयमग्ने त्वे अपि यं यज्ञं चकृमा वयम् ॥८॥

हे अग्निदेव ! ज्ञानी मानिसले सबै देवतालाई राम्ररी सन्तुष्ट गराएझैं हामी जुन यज्ञीय कार्य सम्पन्न गर्दछौं, तो तिम्रो सन्तुष्टिका लागि होऊन्।

[सूक्त - ६]

ऋषि - सोमाहुति भार्गव। देवता - अग्नि। छन्द - गायत्री।

इमां मे अग्ने समिधमिमामुपसदं वनेः। इमा उ षु श्रुधी गिरः ॥१॥

हे अग्निदेव ! तिमी हाम्रो समिधा र आहुति स्वीकार गर्दै हाम्रो स्तोत्र राम्ररी सुन।

अया ते अग्ने विधेमोर्जो नपादश्वमिष्टे। एना सूक्तेन सुजात ॥२॥

हे अक्षय शक्तिसम्पन्न, द्रुतगामी साधनमा गति प्रदान गर्ने, उच्च ख्याति पाएका अग्निदेव ! हाम्रा यस क्रिया र सूक्तबाट तिमी प्रसन्न होऊ।

तं त्वा गीर्भिर्गिर्वणसं द्रविणस्युं द्रविणोदः। सपर्येम सपर्यवः ॥३ ॥

हे ऐश्वर्यप्रदायक अग्निदेव ! हामी तिम्रो प्रतिष्ठा चाहन्छौं। तिम्रा स्तुत्य धन प्रदान गर्ने स्वरूपलाई हामी स्तुति गर्दै पूजा गर्दछौं।

स बोधि सूरिर्मघवा वसुपते वसुदावन्। युयोध्यस्मद् द्वेषांसि ॥४॥

हे ऐश्वर्यप्रदाता धनाधिपति अग्निदेव ! तिमी ऐश्वर्यवान् तथा ज्ञानवान् हुनाले हाम्रो कामना बुझेर हामीमाथि डाह गर्ने हाम्रा शत्रु पर धपाऊ।

स नो वृष्टिं दिवस्परि स नो वाजमनर्वाणम्। स नः सहस्रिणीरिषः ॥५॥

अन्तरिक्षबाट अग्निदेव हाम्रा लागि वर्षा गराऊन्। उनले हामीलाई असल बल र हजारौं किसिमका अन्न प्रदान गरुन्।

ईळानायावस्यवे यविष्ठ दूत नो गिरा। यजिष्ठ होतरा गहि ॥६ ॥

हे बलशाली र अत्यन्त प्रशंसनीय, दुष्टलाई दुःख दिने, होतारूपी अग्निदेव ! तिम्रै संरक्षणका कामनाले स्तोत्ररूपी वाणीले हामी तिम्रो पूजा गर्दछौं। त्यसैले तिमी हामीकहाँ आऊ।

अन्तर्ह्यग्न ईयसे विद्वाञ्जन्मोभया कवे। दूतो जन्येव मित्र्यः ॥७॥

हे मेधावी अग्निदेव ! तिमी मानिसको मनरूपी आकाशमा रहनाले मानिसको दुवै जन्मका विषयमा जान्दछौ। तिमी सबैको हितकारी मित्रजस्तै छौ।

स विद्वाँ आ च पिप्रयो यक्षि चिकित्व आनुषक्। आ चास्मिन्सत्सि बर्हिषि ॥

हे अग्निदेव ! तिमी ज्ञानी हुनाले हाम्रो कामना पूरा गर। तिमी चैतन्ययुक्त हुनाले हाम्रो हविष्यान्न क्रमैसित देवताकहाँ पुऱ्याएर हाम्रा यज्ञमा प्रतिष्ठित होऊ।

[सूक्त - ७]

**ऋषि** - सोमाहुति भार्गव। **देवता** - अग्नि। **छन्द** - गायत्री।

**श्रेष्ठं यविष्ठ भारताग्ने द्युमन्तमा भर। वसो पुरुस्पृहं रयिम् ॥१॥**

हे अत्यन्त बलशाली अग्निदेव ! तिमी सबैका पालक र सुख प्रदाता र आश्रयदाता हौ। महान् तेजस्वी तथा सबैबाट खोजिने ऐश्वर्य हामीलाई मनग्गे मात्रामा देऊ।

**मा नो अरातिरीशत देवस्य मर्त्यस्य च। पर्षि तस्या उत द्विषः ॥२॥**

हे अग्निदेव ! देवता र मानिसहरूका शत्रुले हामीमाथि अधिकार जमाउन नपाऊन्। त्यसका लागि शत्रुबाट हामीलाई जोगाऊ।

**विश्वा उत त्वया वयं धारा उदन्याइव। अति गाहेमहि द्विषः ॥३॥**

हे अग्निदेव ! बलियो धारो भएका पानीले ठूलो ढुङ्गो कटेझैं तिम्रो संरक्षण पाएर रिस गर्ने शत्रुहरूलाई हामी जित्न सकौं।

**शुचिः पावक वन्द्योऽग्ने बृहद्वि रोचसे। त्वं घृतेभिराहुतः ॥४॥**

हे पवित्रता प्रदान गर्ने अग्निदेव ! तिमी पवित्र तथा वन्दना गर्नयोग्य छौ। तिमी घिउका आहुतिले ज्यादै प्रकाशित हुन्छौ।

**त्वं नो असि भारताग्ने वशाभिरुक्षभिः। अष्टापदीभिराहुतः ॥५॥**

हे मनुष्यको हित गर्ने अग्निदेव ! हाम्रा सुन्दर गाई, गोरु र ब्याउने पशुबाट पनि तिमी पूजित भएका छौ।

**द्रवन्नः सर्पिरासुतिः प्रत्नो होता वरेण्यः। सहसस्पुत्रो अद्भुतः ॥६॥**

समिधा अग्निदेवको भोजनरूपी अन्न हो। त्यसमा घिउको सेचन छ, सनातन र वरणयोग्य होताजस्ता अग्निदेव बलले उत्पन्न हुनाले अत्यन्त सुन्दर छन्।

[सूक्त - ८]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - अग्नि। **छन्द** - गायत्री अनुष्टुप्।

**वाजयन्निव नू रथान्योगाँ अग्नेरुप स्तुहि। यशस्तमस्य मीळ्हुषः ॥१॥**

हे मानिसहरू हो ! अत्यन्त यशस्वी र सबैका सुखदायक अग्निदेवलाई धनधान्यका कामनाले रथ राम्ररी सिँगारेझैं स्तुतिसहित पूजा गर।

**यः सुनीथो ददाशुषेऽजुर्यो जरयन्नरिम्। चारुप्रतीक आहुतः ॥२॥**

नेतृत्व प्रदान गरेर उचित बाटामा लगाउने, अविनाशी, उच्च पराक्रम गर्ने, शत्रुनाशक र दानशील अग्निदेवलाई हामी आह्वान गर्दछौं।

**य उ श्रिया दमेष्वा दोषोषसि प्रशस्यते। यस्य व्रतं न मीयते ॥३॥**

सबै घरमा आफ्नै कान्तिले प्रतिष्ठित, दिनरात प्रशंसाका लागि योग्य र निरन्तर आफ्नो व्रत अखण्डित राख्ने अग्निदेव पूज्य र प्रशंसनीय छन्।

**आ यः स्व१र्ण भानुना चित्रो विभात्यर्चिषा। अञ्जानो अजरैरभि ॥४॥**

सूर्यबाट द्युलोक प्रकाशित भएझैं अविनाशी, आश्चर्यकारक अग्निदेव आफ्नो ज्वाला प्रकट गरेर सर्वत्र प्रकाशित हुन्छन्।

**अत्रिमनु स्वराज्यमग्निमुक्थानि वावृधुः। विश्वा अधि श्रियो दधे ॥५॥**

शत्रुनाशक र सुशोभित अग्निदेव स्तुतिले अत्यन्त तेजोमय हुँदै सम्पूर्ण ऐश्वर्य धारण गरेर रमाइला हुन्छन्।

**अग्नेरिन्द्रस्य सोमस्य देवानामूतिभिर्वयम्।**<br>
**अरिष्यन्तः सचेमह्यभि ष्याम पृतन्यतः ॥६॥**

अग्नि, इन्द्र आदि अन्य देवताहरूको संरक्षण पाएर उचित रूपमा सुरक्षित भएपछि आफू कहिल्यै नखिइँदै हामी शत्रुलाई पराजित गरौं।

[सूक्त - ९]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**नि होता होतृषदने विदानस्त्वेषो दीदिवाँ असदत्सुदक्षः।**
**अदब्धव्रतप्रमतिर्वसिष्ठः सहस्रम्भरः शुचिजिह्वो अग्निः ॥१॥**

अग्निदेव होता, मेधावी, प्रदीप्त, पोषक, बलशाली, तेजस्वी, नियमपालक, आश्रयदाता र सत्यवक्ता हुन्। त्यसैले उनी हजारौंका लागि पालनपोषण गर्न समर्थ छन्। त्यस्ता अग्निदेव होताका घरमा प्रतिष्ठित होऊन्।

**त्वं दूतस्त्वमु नः परस्पास्त्वं वस्य आ वृषभ प्रणेता।**
**अग्ने तोकस्य नस्तने तनूनामप्रयुच्छन्दीद्यद्बोधि गोपाः ॥२॥**

हे बलशाली अग्निदेव ! तिमी नै हाम्रा दूत तथा तिमी नै हाम्रा रक्षक हौ। तिमी धन प्रदाता हुनाले हाम्रा सन्तानलाई अलछ्याइँबाट मुक्त गर र कीर्तिसम्पन्न बनाएर कुलको विस्तार गराऊ। तिमी उचित किसमले प्रज्वलित भएर हाम्रो शरीरको रक्षा गर।

**विधेम ते परमे जन्मन्नग्ने विधेम स्तोमैरवरे सधस्थे।**
**यस्माद्योनेरुदारिथा यजे तं प्र त्वे हवींषि जुहुरे समिद्धे ॥३॥**

हे अग्निदेव ! तिम्रो उत्पत्तिस्थान द्युलोकमा हामी स्तुति र पूजा गर्दछौँ। द्युलोकभन्दा तल अन्तरिक्षमा स्तुतिवचनले तिम्रो पूजा गर्दछौँ। तिमी प्रकट भएको पृथ्वीलोकमा यज्ञमा प्रज्वलित भएपछि हविष्यान्न समर्पित गर्दै हामी तिम्रो पूजा गरौँ।

**अग्ने यजस्व हविषा यजीयान् श्रुष्टी देष्णमभि गृणीहि राधः।**
**त्वं ह्यसि रयिपती रयीणां त्वं शुक्रस्य वचसो मनोता ॥४॥**

हे अग्निदेव ! तिमी ठूला याज्ञिक हौ। त्यसैले स्वीकार गर्ने योग्य उपयुक्त पदार्थ एवं धन हामीलाई चाँडै प्रदान गर। तिमी धनका स्वामी हौ, हाम्रो स्तुति सुनिदेऊ।

**उभयं ते न क्षीयते वसव्यं दिवेदिवे जायमानस्य दस्म।**
**कृधि क्षुमन्तं जरितारमग्ने कृधि पतिं स्वपत्यस्य रायः ॥५॥**

हे दुःखनाशक अग्निदेव ! तिमीबाट प्रदान गरिएका दुवै किसिमका धन कहिल्यै नष्ट हुँदैनन्। त्यसैले स्तोतालाई यशस्वी बनाऊ र असल सन्तानरूपी धन प्रदान गर।

**सैनानीकेन सुविदत्रो अस्मे यष्टा देवाँ आयजिष्ठः स्वस्ति।**
**अदब्धो गोपा उत नः परस्पा अग्ने द्युमदुत रेवद्दिदीहि ॥६॥**

हे अग्निदेव ! तिमी आफ्ना तेजस्वी ज्वालाले हामीलाई उत्तम ऐश्वर्ययुक्त गराऊ। तिमी कसैबाट पनि अपहेलित नहुने, उत्तम याज्ञिक, देवताहरूका पोषक र सङ्कटबाट मुक्त गराउने ठूला रक्षक हौ। तिमी तेजस्वी, ऐश्वर्यवान् र कल्याणकारी रूपमा सर्वत्र प्रकाशित होऊ।

[सूक्त - १०]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**जोहूत्रो अग्निः प्रथमः पितेवेळस्पदे मनुषा यत्समिद्धः।**
**श्रियं वसानो अमृतो विचेता मर्मृजेन्यः श्रवस्यः स वाजी ॥१॥**

यज्ञस्थलमा मानिसबाट प्रज्वलित हुने, पितासरिका पालक, प्रमुख तथा पूज्य अग्निदेव शोभायुक्त अमर, विभिन्न ज्ञानले सम्पन्न, अन्नका धनी, बलिष्ठ र सबै पदार्थलाई पवित्र बनाउने हुनाले सबैका निम्ति पूजनीय पनि छन्।

**श्रूया अग्निश्चित्रभानुर्हवं मे विश्वाभिर्गीर्भिरमृतो विचेताः।**
**श्यावा रथं वहतो रोहिता वोतारुषाह चक्रे विभृत्रः ॥२॥**

अमर, विशेष ज्ञानयुक्त, अद्‌भुत कान्तियुक्त अग्निदेवले जुनसुकै वाणीबाट गरिएको हाम्रो प्रार्थना स्वीकार गरुन्। अग्निदेवको रथ श्याम, रक्त र श्वेत वर्णका अश्वले तान्दछन्। तिनै अग्निदेवलाई विभिन्न ठाउँमा घुमाउँछन्।

**उत्तानायामजनयन्त्सुषूतं भुवदग्निः पुरुपेशासु गर्भः।**
**शिरिणायां चिदक्तुना महोभिरपरीवृतो वसति प्रचेताः ॥३॥**

विभिन्न किसिमका औषधिमा अग्निदेव गोप्य रूपमा विद्यमान छन्। अध्वर्युले मन्थन गरेर अग्नि उत्पन्न गर्दछन्। रातका अन्धकारले नछोपिईकन यिनी आफ्नो तेजबाट सर्वत्र प्रकाशित हुन्छन्।

जिघर्म्यग्निं हविषा घृतेन प्रतिक्षियन्तं भुवनानि विश्वा।
पृथुं तिरश्चा वयसा बृहन्तं व्यचिष्ठमन्नै रभसं दृशानम् ॥४॥

सम्पूर्ण लोकमा व्याप्त, महान् तेजस्वी, काठ आदि पदार्थमा धेरै फैलिने, तेर्छो ज्वाला भएका, सुन्दर, दर्शनीय अग्निलाई हामी घिउ र चरुले सेचन गरेर प्रदीप्त गराउँछौँ।

आ विश्वतः प्रत्यञ्चं जिघर्म्यरक्षसा मनसा तज्जुषेत।
मर्यश्रीः स्पृहयद्वर्णो अग्निर्नाभिमृशे तन्वा३ जर्भुराणः ॥५॥

सर्वत्र व्याप्त अग्निदेवलाई हामी घिउले सेचन गरेर प्रदीप्त गराउँछौँ। हे अग्निदेव ! अर्पण गरिएका घिउको आहुति शान्तिपूर्वक ग्रहण गर। मानिसबाट पूज्य, कान्तिवान् अग्निदेव तेजस्वी रूपमा प्रदीप्त हुँदा कसैले स्पर्श गर्न सक्दैनन्।

ज्ञेया भागं सहसानो वरेण त्वादूतासो मनुवद्वदेम।
अनूनमग्निं जुह्वा वचस्या मधुपृचं धनसा जोहवीमि ॥६॥

हे अग्निदेव ! तिमी आफ्नो शत्रुनिवारक शक्तिले विजय प्राप्त गर्दै स्तुति ग्रहण गर। हामी तिमीलाई मनुको दूतका रूपमा स्तुति गर्दछौँ। मधुरतायुक्त, धनदाता अग्निदेवलाई हामी स्तुतिपूर्वक घिउका आहुति प्रदान गर्दछौँ।

[सूक्त - ११]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - इन्द्र। छन्द - विराट् स्थाना त्रिष्टुप्।

श्रुधी हवमिन्द्र मा रिषण्यः स्याम ते दावने वसूनाम्।
इमा हि त्वामूर्जो वर्धयन्ति वसूयवः सिन्धवो न क्षरन्तः ॥१॥

हे इन्द्रदेव ! हाम्रो निवेदन तिमी स्वीकार गर, हामीलाई अपहेला नगर। धन दान गर्ने बेलामा हामी तिम्रा कृपापात्र रहौँ। हामीले दिएका हव्यले ओरालो लागेको पानीको जस्तै तिम्रो शक्ति बढाओस्।

सृजो महीरिन्द्र या अपिन्वः परिष्ठिता अहिना शूर पूर्वीः।
अमर्त्यं चिद्दासं मन्यमानमवाभिनदुक्थैर्वावृधानः ॥२॥

हे इन्द्रदेव ! जल रोक्ने अहि नामका असुरको बाँध भत्काएर तिमीले मुक्त गरेको जल जमिनमा बग्यो। आफूलाई अमर ठान्ने घमन्डी असुरलाई स्तुतिले उन्नति गरेपछि तिमीले धराशायी बनायौ।

उक्थेष्विन्नु शूर येषु चाकन्स्तोमेष्विन्द्र रुद्रियेषु च।
तुभ्येदेता यासु मन्दसानः प्रवायवे सिस्रते न शुभ्राः ॥३॥

हे वीर इन्द्रदेव ! तिमी जस्ता स्तुतिले खुसी हुन्छौ र रुद्रदेव जस्ता स्तुति रुचाउँछन्, हे बलशालीहरू हो ! तिमीहरूका लागि यज्ञमा त्यस्तै स्तुति प्रकट हुन्छ।

शुभ्रं नु ते शुष्मं वर्धयन्तः शुभ्रं वज्रं बाह्वोर्दधानाः।
शुभ्रस्त्वमिन्द्र वावृधानो अस्मे दासीर्विशः सूर्येण सह्याः ॥४॥

हे इन्द्रदेव ! तेजस्वी, बल बढाउने टलक्क टल्कँदो वज्र हामी तिम्रा हातमा धारण गराउँछौँ। तेजस्वी रूप विस्तृत गर्दै सूर्यजस्तै सन्तापसम्पन्न वज्रले तिमी आसुरी प्रजाको विनाश गर।

गुहा हितं गुह्यं गूळ्हमप्स्वपीवृतं मायिनं क्षियन्तम्।
उतो अपो द्यां तस्तभ्वांसमहन्नहिं शूर वीर्येण ॥५॥

हे इन्द्रदेव ! तिमीले द्युलोकमा आक्रमण गर्‍यौ र जल रोकेर गुफामा लुकेका अहि भन्ने मायावी राक्षसलाई कमजोर गरायौ। त्यसलाई आफ्ना पराक्रमले विनाश गर्‍यौ

स्तवा नु त इन्द्र पूर्व्या महान्युत स्तवाम नूतना कृतानि।
स्तवा वज्रं बाह्वोरुशन्तं स्तवा हरी सूर्यस्य केतू ॥६॥

हे इन्द्रदेव ! तिमीले विगतमा गरेका असल कामको प्रशंसा गर्दै वर्तमानमा गर्न लागेका कामको पनि प्रशंसा गर्दछौँ। हातमा धारण गरेको सुन्दर वज्र र सूर्यको किरणजस्तो उज्यालो तिम्रा अश्वको पनि हामी प्रशंसा गर्दछौँ।

हरी नु त इन्द्र वाजयन्ता घृतश्चुतं स्वारमस्वार्ष्टाम्।
वि समना भूमिरप्रथिष्टारंस्त पर्वतश्चित्सरिष्यन् ॥७॥

हे इन्द्रदेव ! तिम्रा द्रुतगामी अश्वको गर्जना जल वर्षा गराउने बादलको जस्तै छ। जलको वर्षाले पृथिवीमा अत्यन्त उन्नति हुन्छ। मेघहरू पर्वतमा कुदेझैँ गर्दछन्।

नि पर्वतः साद्यप्रयुच्छन्त्सं मातृभिर्वावशानो अक्रान्।
दूरे पारे वाणीं वर्धयन्त इन्द्रेषितां धमनिं पप्रथन्नि ॥८॥

जलले भरिएको जाँगरिलो बादल आकाशमा गर्जन गर्दै विचरण गर्दा स्तोताको वाणीरूपी स्तुतिले इन्द्रदेवको प्रेरणा पायो र मेघ अझै टाढाटाढासम्म फैलियो।

इन्द्रो महां सिन्धुमाशयानं मायाविनं वृत्रमस्फुरन्निः।
अरेजेतां रोदसी भियाने कनिक्रदतो वृष्णो अस्य वज्रात् ॥९॥

अन्तरिक्षमा जलको मार्ग रोक्ने ज्यादै ठूलो मायावी राक्षस वृत्रको इन्द्रदेवले वध गरे। त्यस बेला बलशाली इन्द्रदेवको सिंहजस्तै गर्जन गर्ने वज्रका डरले दुवै लोक काँपे।

अरोरवीद्वृष्णो अस्य वज्रोऽमानुषं यन्मानुषो निजूर्वात्।
नि मायिनो दानवस्य माया अपादयत्पपिवान्त्सुतस्य ॥१०॥

मानिसको कुभलो गर्ने वृत्रासुरलाई मानिसको भलो गर्ने इन्द्रदवले मारे। त्यस बेला बलशाली इन्द्रदेवका वज्रले बारम्बार गर्जन गर्‍यो। अनि सोमरस पिउन रहर गर्ने इन्द्रदेवले त्यस मायावी राक्षसको माया नष्ट गराएका थिए।

पिबापिबेदिन्द्र शूर सोमं मन्दन्तु त्वा मन्दिनः सुतासः।
पृणन्तस्ते कुक्षी वर्धयन्त्वित्था सुतः पौर इन्द्रमाव ॥११॥

हे वीर इन्द्रदेव ! सोमरस अवश्य पान गर। प्रशोधन गरिएको, आनन्दवर्धक सोमरसले तिमीलाई हर्षित गरोस्। पेटमा गएर यसले तिम्रो शक्ति बढाओस्। यसरी नै यसले सबै प्रजाहरूको रक्षा गरोस्।

त्वे इन्द्राप्यभूम विप्रा धियं वनेम ऋतया सपन्तः।
अवस्यवो धीमहि प्रशस्तिं सद्यस्ते रायो दावने स्याम ॥१२॥

हे वीर इन्द्रदेव ! हामी ज्ञानीहरू यज्ञीय कर्मको कामनाले तिम्रो आश्रय प्राप्त गर्दै तिमीबाट सम्बद्ध रहौँ। तिमीबाट बुद्धि प्राप्त गरौँ। तिम्रो स्तुति गर्दै हामीहरू संरक्षणको कामना गर्दछौँ। तिम्रो दानबाट हामीलाई धन प्राप्त होस्।

स्याम ते त इन्द्र ये त ऊती अवस्यव ऊर्जं वर्धयन्तः।
शुष्मिन्तमं यं चाकनाम देवास्मे रयिं रासि वीरवन्तम् ॥१३॥

हे इन्द्रदेव ! रक्षाका आशाले हामी तिमीलाई तेजस्वी बनाउँछौँ। त्यसपछि हामी सधैँ तिम्रै संरक्षणमा रहौँ। हाम्रो रहरअनुसारका वीरले युक्त धन हामीलाई प्रदान गर।

रासि क्षयं रासि मित्रमस्मे रासि शर्ध इन्द्र मारुतं नः।
सजोषसो ये च मन्दसानाः प्र वायवः पान्त्यग्रणीतिम् ॥१४॥

हे इन्द्रदेव ! बराबर रूपमा आपसी प्रेम भएका, हर्षदायक मरुत्गण अगुवा भएर नेतृत्व गर्नेलाई रक्षा गर्दछन्। मरुत्हरूको आफन्तपना र शक्तिशाली आश्रय प्रदान गर।

व्यन्त्विन्नु येषु मन्दसानस्तृपत्सोमं पाहि द्रह्यदिन्द्र।
अस्मान्त्सु पृत्स्वा तरुत्रावर्धयो द्यां बृहद्भिरर्कैः ॥१५॥

हे इन्द्रदेव ! जुन यज्ञमा तिमी आनन्दित हुन्छौ, त्यहाँ सन्तुष्टि प्राप्त हुने सोमरस ढुक्कले पान गर। सबै स्तोताले त्यो सोमरस पान गरुन्। हे सङ्कटबाट पार लगाउने देव ! हाम्रा महान् स्तोत्रले सङ्ग्राममा तेजस्वी बनाओ र आकाश समृद्ध पार।

बृहन्त इन्नु ये ते तरुत्रोक्थेभिर्वा सुम्नमाविवासान्।
स्तृणानासो बर्हिः पस्त्यावत्त्वोता इदिन्द्र वाजमग्मन् ॥१६॥

हे दुःखनाशक इन्द्रदेव ! जुन महान् साधक स्तोत्रका माध्यमबाट तिम्रो स्नेहको आशा गर्दछन् र कुशको आसन प्रदान गर्दछन्। तिनीहरू चाँडै तिम्रो संरक्षण पाएर अन्नसहित घर प्राप्त गर्दछन्।

उग्रेष्विन्नु शूर मन्दसानस्त्रिकद्रुकेषु पाहि सोममिन्द्र।
प्रदोधुवच्छ्मश्रुषु प्रीणानो याहि हरिभ्यां सुतस्य पीतिम् ॥१७॥

हे वीर इन्द्रदेव ! सोमरस तीनै लोकमा सूर्यजत्तिकै बल प्रदान गर्ने खालको छ आनन्द मानेर पान गर। असल घोडामा आरूढ हुँदै दाह्रीजुँगा फड्कादैं सोमरस पान गर।

धिष्वा शवः शूर येन वृत्रमवाभिनद्दानुमौर्णवाभम्।
अपावृणोर्ज्योतिरार्याय नि सव्यतः सादि दस्युरिन्द्र ॥१८॥
हे वीर इन्द्रदेव ! माकुराको जालोजस्ता अवरोधले पानीलाई रोकिरहेका वृत्रासुरलाई जुन पराक्रमले तिमीले छिन्नभिन्न गरायौ, उसै बलको प्रयोग गर। तिमीले दस्युहरूलाई हटाएर मानिसलाई सूर्यको प्रकाश उपलब्ध गरायौ।

सनेम ये त ऊतिभिस्तरन्तो विश्वाः स्पृध आर्येण दस्यून्।
अस्मभ्यं तत्त्वाष्ट्रं विश्वरूपमरन्धयः साख्यस्य त्रिताय ॥१९॥
हे इन्द्रदेव ! मानिसलाई संरक्षण गर्दै तिमीले तीन प्रकारका तापले सताउने असुरलाई आफ्ना अधीनमा बनायौ र त्वष्टाका पुत्र विश्वरूपलाई नष्ट गरेका थियौ। हामीलाई पनि तिमी संरक्षण प्रदान गर।

अस्य सुवानस्य मन्दिनस्त्रितस्य न्यर्बुदं वावृधानो अस्तः।
अवर्तयत्सूर्यो न चक्रं भिनद्वलमिन्द्रो अङ्गिरस्वान् ॥२०॥
इन्द्रदेव आफैँ अघि सरेर हर्षित हुँदै यज्ञकर्ता त्रितको शत्रु अर्बुदलाई मारे। सूर्यले रथका पाङ्ग्रा घुमाएझैँ अङ्गिराका मित्र इन्द्रदेवले वज्र घुमाएर असुर विनाश गरे।

नूनं सा ते प्रति वरं जरित्रे दुहीयदिन्द्र दक्षिणा मघोनी।
शिक्षा स्तोतृभ्यो माति धग्भगो नो बृहद्वदेम विदथे सुवीराः ॥२१॥
हे इन्द्रदेव ! यज्ञका समयमा स्तोतालाई तिमीले प्रदान गरेको ऐश्वर्ययुक्त दक्षिणा निश्चित रूपमा उत्तम धन प्राप्त गराउने हुन्छ। स्तोतासँगै हामीलाई पनि त्यही ऐश्वर्य प्रदान गर। त्यसबाट हामी यज्ञमा महान् पराक्रम प्रदान गर्ने खालका स्तोत्र उच्चारण गरौँ।

[सूक्त - १२]

ऋषि – गृत्समद भार्गव शौनक। देवता – इन्द्र। छन्द – त्रिष्टुप्।

यो जात एव प्रथमो मनस्वान्देवो देवान्क्रतुना पर्यभूषत्।
यस्य शुष्माद्रोदसी अभ्यसेतां नृम्णस्य मह्ना स जनास इन्द्रः ॥१॥
हे मनुष्यहरू हो ! आफ्ना पराक्रमका प्रभावले ख्याति कमाएका मनस्वी इन्द्रदेव उत्पन्न हुँदासाथ आफ्ना श्रेष्ठ कर्मले देवताहरूलाई अलङ्कृत गरेका थिए। उनका शक्तिले आकाश र पृथिवी दुवै लोक भयभीत भए।

यः पृथिवीं व्यथमानामदृंहद्यः पर्वतान्प्रकुपिताँ अरम्णात्।
यो अन्तरिक्षं विममे वरीयो यो द्यामस्तभ्नात्स जनास इन्द्रः ॥२॥
हे मनुष्यहरू हो ! इन्द्रदेवले विशाल आकाशलाई मापन गरे, द्युलोकलाई धारण गरे र भूकम्पले कम्पित पृथ्वीलाई बलियो आधार प्रदान गरे। त्यसो गरिसकेपछि आगो बर्साउने पर्वतहरूलाई थान्को लगाए।

यो हत्वाहिमरिणात्सप्त सिन्धून्यो गा उदाजदपधा वलस्य।
यो अश्मनोरन्तरग्निं जजान संवृक्समत्सु स जनास इन्द्रः ॥३॥
हे मनुष्यहरू हो ! जसले वृत्र राक्षसलाई मारेर सात वटा नदीहरू बगाए, बल राक्षसले अपहरण गरेका गाईलाई जसले मुक्त पारे, जसले ढुङ्गा भित्रबाट अग्निदेवलाई उत्पन्न गरे, जसले शत्रु सखाप पारे ती इन्द्रदेव नै हुन्।

येनेमा विश्वा च्यवना कृतानि यो दासं वर्णमधरं गुहाकः।
श्वघ्नीव यो जिगीवाँ लक्षमाददर्यः पुष्टानि स जनास इन्द्रः ॥४॥
हे मनुष्यहरू हो ! जसले समस्त गतिशील लोकको निर्माण गरे, जसले दास वर्णलाई निम्न स्थान दिए, जसले आफ्नो लक्ष्य प्राप्त गरे र व्याधाले पशुलाई झैँ जसले शत्रुलाई लखेटेर उनको समृद्धि आफ्ना अधिकारमा लिए, ती इन्द्रदेव नै हुन्।

यं स्मा पृच्छन्ति कुह सेति घोरमुतेमाहुर्नैषो अस्तीत्येनम्।
सो अर्यः पुष्टीर्विजइवा मिनाति श्रदस्मै धत्त स जनास इन्द्रः ॥५॥
जुन इन्द्रदेवका विषयमा मानिसहरू तिनी कहाँ छन् भनेर सोध्ने गर्दछन्, उनै इन्द्रदेवका सम्बन्धमा कतिपय मानिसहरू तिनी त छैनन् पनि भन्दछन्। इन्द्रदेव आफूलाई नपत्याउने शत्रुको पोषणकारी

सम्पत्ति वीरतापूर्वक नष्ट पारिदिन्छन्। हे मनुष्यहरू हो ! यस्ता इन्द्रदेवप्रति श्रद्धा व्यक्त गर, यी इन्द्रदेव सबैभन्दा महान् छन्।

**यो रध्रस्य चोदिता यः कृशस्य यो ब्रह्मणो नाधमानस्य कीरेः।**
**युक्तग्राव्णो योऽविता सुशिप्रः सुतसोमस्य स जनास इन्द्रः ॥६॥**

हे मनुष्यहरू हो ! जो दरिद्र, ज्ञानी र स्तुति गर्नेहरूलाई धन प्रदान गर्दछन्, सोमरस निकाल्नका लागि ढुङ्गा ओछ्याएर तयार भएका छन्, त्यस यजमानको रक्षा जसले गर्दछ, उनी इन्द्रदेव नै हुन्।

**यस्याश्वासः प्रदिशि यस्य गावो यस्य ग्रामा यस्य विश्वे रथासः।**
**यः सूर्यं य उषसं जजान यो अपां नेता स जनास इन्द्रः ॥७॥**

हे मनुष्यहरू हो ! जसका अधीनमा सबै गाउँ, गाई, घोडा र रथहरू छन्, जसले सूर्य र उषा उत्पन्न गराए, जो समस्त प्रकृतिका सञ्चालक हुन्, ती इन्द्रदेव नै हुन्।

**यं क्रन्दसी संयती विह्वयेते परेऽवर उभया अमित्राः।**
**समानं चिद्रथमातस्थिवांसा नाना हवेते स जनास इन्द्रः ॥८॥**

हे मनुष्यहरू हो ! आपसमा सँगै हिँड्ने द्युलोक र पृथिवीले जसलाई सहायताका लागि गुहार्दछन्, ठूला वा साना जुनसुकै शत्रु जसलाई युद्धमा सहयोगका लागि बोलाउँछन्, एउटै रथमाथि आरूढ दुई वीर जसलाई मद्दतका लागि बोलाउँछन्, ती इन्द्रदेव हुन्।

**यस्मान्न ऋते विजयन्ते जनासो यं युध्यमाना अवसे हवन्ते।**
**यो विश्वस्य प्रतिमानं बभूव यो अच्युतच्युत्स जनास इन्द्रः ॥९॥**

हे मनुष्यहरू हो ! जसको सहायताविना शूरवीर युद्धमा विजयी हुँदैनन्, युद्धरत वीर आफ्नो संरक्षणका लागि जसलाई पुकार्दछन्, जो समस्त संसारलाई यथाविधि जानेर अनन्त शक्ति भएका शत्रुलाई संहार गर्दछन्, ती इन्द्रदेव नै हुन्।

**यः शश्वतो मह्येनो दधानानमन्यमानाञ्छर्वा जघान।**
**यः शर्धते नानुददाति शृध्यां यो दस्योर्हन्ता स जनास इन्द्रः ॥१०॥**

हे मनुष्यहरू हो ! जसले आफ्ना वज्रले भीषण शत्रु सखाप पारे, जो अहङ्कारीको गर्व नष्ट गर्दछन्, जो अर्काको पदार्थ हरण गर्ने दुष्टको नाश गर्दछन्, ती इन्द्रदेव नै हुन्।

**यः शम्बरं पर्वतेषु क्षियन्तं चत्वारिंश्यां शरद्यन्वविन्दत्।**
**ओजायमानं यो अहिं जघान दानुं शयानं स जनास इन्द्रः ॥११॥**

हे मनुष्यहरू हो ! चालीस वर्षसम्म पर्वतमा लुकेर बसेका शम्बर राक्षसलाई जसले फेला पारे, जसले जल रोकेर सुत्ने वृत्र असुरलाई मारिदिए, ती इन्द्रदव नै हुन्।

**यः सप्तरश्मिर्वृषभस्तुविष्मानवासृजत्सर्तवे सप्त सिन्धून्।**
**यो रौहिणमस्फुरद्वज्रबाहुर्द्यामारोहन्तं स जनास इन्द्रः ॥१२॥**

हे मनुष्यहरू हो ! सूर्यका सात किरणजस्ता सात नदीलाई जसले प्रभावशाली रूपमा प्रवाहित गराए, जसले द्युलोकतर्फ आइरहेका रोहिणीलाई आफ्नै हातका वज्रले रोके, ती इन्द्रदेव नै हुन्।

**द्यावा चिदस्मै पृथिवी नमेते शुष्माच्चिदस्य पर्वता भयन्ते।**
**यः सोमपा निचितो वज्रबाहुर्यो वज्रहस्तः स जनास इन्द्रः ॥१३॥**

हे मनुष्यहरू हो ! जोप्रति द्युलोक र पृथिवी सधैँ भुक्छन्, जसका बलसित पर्वतहरू थर्कमान हुन्छन्, जो वज्रजस्तै बलिया भुजा र शरीर भएका छन् र जो सोमपान गर्दछन्, ती इन्द्रदेव हुन्।

**यः सुन्वन्तमवति यः पचन्तं यः शंसन्तं यः शशमानमूती।**
**यस्य ब्रह्म वर्धनं यस्य सोमो यस्येदं राधः स जनास इन्द्रः ॥१४॥**

हे मनुष्यहरू हो ! सोमरस निकाल्ने, प्रशोधन गर्ने, स्तोत्रले स्तुति गर्नेहरूलाई आफ्ना रक्षा साधनले जसले रक्षा गर्दछन्, जसको स्तोत्र र सोम हाम्रो ऐश्वर्य बढाउन योग्य छ, ती इन्द्रदेव नै हुन्।

**यः सुन्वते पचते दुध्र आ चिद्वाजं दर्दर्षि स किलासि सत्यः।**
**वयं त इन्द्र विश्वह प्रियासः सुवीरासो विदथमा वदेम ॥१५॥**

सोमयज्ञ गर्ने र सोमरस प्रशोधन गर्ने याजकलाई जसले धन प्रदान गर्दछन्, पक्का पनि ती सत्यरूपी इन्द्रदेव नै हुन्। हे इन्द्रदेव ! आफन्त र शाखासन्तानसहित हामी सधैँ तिम्रो यशोगान गरौँ।

[सूक्त - १३]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - अग्नि। छन्द - जगती त्रिष्टुप्।

ऋतुर्जनित्री तस्या अपस्परि मक्षू जात आविशद्यासु वर्धते।
तदाहना अभवत् पिप्युषी पयोंऽशोः पीयूषं प्रथमं तदुक्थ्यम् ॥१॥

वर्षाले सोम उत्पत्ति हुन्छ। त्यो सोम जलमा मिसिएर बढ्छ। श्रेष्ठ रसले सम्पन्न लता पेलेर सोमरस निकाल्न योग्य हुन्छ। यो प्रशंसनीय सोमरस इन्द्रदेवको हविष्यान्न हो।

सध्रीमा यन्ति परि बिभ्रतीः पयो विश्वप्स्न्याय प्र भरन्त भोजनम्।
समानो अध्वा प्रवतामनुष्यदे यस्ताकृणोः प्रथमं सास्युक्थ्यः ॥२॥

नदीहरू बग्दै समुद्रलाई जलले भरिदिएर मानौं भोजन गराउँछन्। हे इन्द्रदेव ! यस्तो अद्‌भुत कार्य गर्ने तिमी प्रशंसनीय छौ।

अन्वेको वदति यद्ददाति तद्रूपा मिनन्तदपा एक ईयते।
विश्वा एकस्य विनुदस्तितिक्षते यस्ताकृणोः प्रथमं सास्युक्थ्यः ॥३॥

कोही केही दिएर त्यसको चर्चा गर्छ। कुनै रूपको भेद गर्दछ। कुनै हटाउनलायक कुरो हटाउँछ। हे इन्द्रदेव ! तिमीले यस्ता कामहरू पहिले नै सम्पन्न गराइसकेका छौ। त्यसैले तिमी प्रशंसनीय छौ।

प्रजाभ्यः पुष्टिं विभजन्त आसते रयिमिव पृष्ठं प्रभवन्तमायते।
असिन्वन्दंष्ट्रैः पितुरत्ति भोजनं यस्ताकृणोः प्रथमं सास्युक्थ्यः ॥४॥

अभ्यागतलाई झैं प्रजालाई ऐश्वर्य र पोषक अन्न प्रदान गर्दछन्। मानिसले आफ्ना दाँतले चपाएर खाएझैं तिमी समस्त जगत्‌लाई खान्छौ। यस्ता हितकारी कार्य गरेका कारण तिमी प्रशंसनीय छौ।

अधाकृणोः पृथिवीं सन्दृशे दिवे यो धौतीनामहिहन्नारिणक्पथः।
तं त्वा स्तोमेभिरुदभिर्न वाजिनं देवं देवा अजनन्त्सास्युक्थ्यः ॥५॥

हे वृत्रनाशक इन्द्रदेव ! तिमीले नदीलाई प्रवाहित हुने मार्ग फराकिलो गरिदियौ र सूर्यका प्रकाशमा दर्शनीय पृथिवीलाई स्थापित गरायौ। जसरी औंषधीलाई जलले सेचन गरेर पुष्टिदायक बनाउँछौं, उसै गरी स्तोत्रका माध्यमले स्तुति गर्दै साधकले तिमीलाई बलशाली बनाउँछन्। तिमी यसरी नै प्रशंसनीय छौ।

यो भोजनं च दयसे च वर्धनमार्द्राद्‌ा शुष्कं मधुमद्दुदोहिथ।
सः शेवधिं नि दधिषे विवस्वति विश्वस्यैक ईशिषे सास्युक्थ्यः ॥६॥

हे इन्द्रदेव ! तिमी वृद्धिको साधनसँगै भोजन प्रदान गर्दछौ। काँचा बिरुवाबाट मिठो पाकेको फल प्राप्त गराउँछौ। ऐश्वर्य प्रदान गर्ने तिमी एक्लै सम्पूर्ण विश्वका स्वामी हौ। त्यसरी नै तिमी प्रशंसनीय छौ।

यः पुष्पिणीश्च प्रस्वश्च धर्मणाधि दाने व्य१वनीरधारयः।
यश्चासमा अजनो दिद्युतो दिव उरुरूर्वाँ अभितः सास्युक्थ्यः ॥७॥

हे इन्द्रदेव ! तिमीले खेतबारीका फलफूलमा औंषधीका गुणले सम्पन्न गराएर तिनको रक्षा गरेका छौ। तिमीले प्रकाशित सूर्यलाई विभिन्न खालका किरण प्रदान गरेका छौ। तिम्रो महानताले टाढाटाढासम्म पर्वत उत्पन्न भएका छन्। तिमी महान् र प्रशंसनीय छौ।

यो नार्मरं सहवसुं निहन्तवे पृक्षाय च दासवेशाय चावहः।
ऊर्जयन्त्या अपरिविष्टमास्यमुतैवाद्य पुरुकृत्सास्युक्थ्यः ॥८॥

हे बहुकर्मा इन्द्रदेव ! दस्युको विनाश गर्ने उद्देश्यले तिमीले नृमरका पुत्र सहवसुलाई बलशाली वज्रका प्रहारले मारिदिएर अन्न प्राप्त गर्‍यौ। त्यसैले तिमी प्रशंसनीय छौ।

शतं वा यस्य दश साकमाद्य एकस्य श्रुष्टौ यद्ध चोदमाविथ।
अरज्जौ दस्यून्त्समुनब्दभीतये सुप्राव्यो अभवः सास्युक्थ्यः ॥९॥

हे इन्द्रदेव ! दानशील यजमानलाई तिमीले सुख र संरक्षण प्रदान गर्‍यौ। तिम्रा रथ दस सय अश्वले तान्दछन्। डोरीले नबाँधीकनै तिमीले दभीति ऋषिको सुरक्षाका लागि दस्युलाई नाश गरायौ र उनको असल मित्र बन्यौ। तिमी प्रशंसनीय छौ।

विश्वेदनु रोधना अस्य पौंस्यं ददुरस्मै दधिरे कृत्नवे धनम्।
षडस्तभ्ना विष्टिरः पञ्च सन्दृशः परि परो अभवः सास्युक्थ्यः ॥१०॥

इन्द्रदेवका पराक्रमअनुसार नदीहरू प्रवाहित हुन्छन्। उनकै लागि सबैले धन एकत्रित गर्दछन् र यजमानलाई हविष्यान्न दिन्छन्। हे इन्द्रदेव ! पाँच वर्गको पालनका लागि छ खालका असल कुरा धारण गर्नाले तिमी प्रशंसनीय छौ।

सुप्रवाचनं तव वीर वीर्यं१ यदेकेन क्रतुना विन्दसे वसु।
जातूष्ठिरस्य प्र वयः सहस्वतो या चकर्थ सेन्द्र विश्वास्युक्थ्यः ॥११॥

हे इन्द्रदेव ! एकै पटकको प्रयासमा नै तिमी मन परेको वस्तु प्राप्त गर्दछौ। तिम्रो यो पराक्रम प्रशंसनीय छ। उत्पन्न भएका प्राणीलाई अन्न दिने महान् कार्य गरेकाले तिमी प्रशंसनीय छौ।

अरमयः सरपसस्तराय कं तुर्वीतये च वय्याय च स्रुतिम्।
नीचा सन्तमुदनयः परावृजं प्रान्धं श्रोणं श्रवयन्त्सास्युक्थ्यः ॥१२॥

हे इन्द्रदेव ! तुर्वीति र वय्यलाई तिमीले बगिरहेका पानीका धारबाट सजिलैसित पारि तरेर जाने मार्ग देखाइदियौ। अन्ध र पङ्गु परावृक ऋषिलाई गहिरो जलबाट निकालेर आँखा र गोडा प्रदान गर्दै आफ्नो ख्याति बढायौ। तिमी प्रशंसनीय छौ।

अस्मभ्यं तद्वसो दानाय राधः समर्थयस्व बहु ते वसव्यम्।
इन्द्र यच्चित्रं श्रवस्या अनु द्यून्बृहद्वदेम विदथे सुवीराः ॥१३॥

हे इन्द्रदेव ! तिमी महान् ऐश्वर्यशाली छौ। असल कर्मका लागि हामीलाई धन देऊ। हामी सधैँ तिम्रो धन प्राप्त गर्ने कामना गर्दछौँ। हामी यज्ञमा पुत्रपौत्रादिसहित स्तोत्र गाएर तिमीलाई स्तुति गरौँ।

## [सूक्त - १४]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अध्वर्यवो भरतेन्द्राय सोममामत्रेभिः सिञ्चता मद्यमन्धः।
कामी हि वीरः सदमस्य पीतिं जुहोत वृष्णे तदिदेष वष्टि ॥१॥

हे अध्वर्युहरू हो ! सधैँ सोमपान गर्ने इन्द्रदेवलाई मनग्गे मात्रामा सोमरस र हर्षदायक अन्न प्रदान गर। इन्द्रदेवको कामनाअनुसार सुखवर्षक सोमको आहुति प्रदान गर।

अध्वर्यवो यो अपो वव्रिवांसं वृत्रं जघानाशन्येव वृक्षम्।
तस्मा एतं भरत तद्वशायँ एष इन्द्रो अर्हति पीतिमस्य ॥२॥

हे अध्वर्युहरू हो ! बिजुलीले वृक्षहरू धराशायी बनाएझैँ जुन इन्द्रदेवले जल रोकेर राखेका वृत्रलाई धराशायी गराए, उनै इन्द्रदेव यस सोमरसका लागि योग्य छन्। त्यसैले उनको इच्छाअनुसारको सोमरस प्रदान गर।

अध्वर्यवो यो दृभीकं जघान यो गा उदाजदप हि वलं वः।
तस्मा एतमन्तरिक्षे न वातमिन्द्रं सोमैरोर्णुत जूर्न वस्त्रैः ॥३॥

हे अध्वर्युहरू हो ! जुन इन्द्रदेवले दृभीक राक्षस मारे, जसले बलपूर्वक रोकिएका गाईलाई मुक्त गराए, ती इन्द्रदेवलाई आकाशमा व्याप्त वायुझैँ यो सोम अर्पित गर। शरीरका वस्त्रझैँ इन्द्रदेवलाई सोमले ओढीओछ्याई बनाइदेऊ।

अध्वर्यवो य उरणं जघान नव चख्वांसं नवतिं च बाहून्।
यो अर्बुदमव नीचा बबाधे तमिन्द्रं सोमस्य भृथे हिनोत ॥४॥

हे अध्वर्युहरू हो ! उरणका उनान्सय भुजा काटेर मार्ने र अर्बुद राक्षसलाई उँधोमुन्टो पारेर दुःख दिने इन्द्रदेवलाई सोमयज्ञमा आउनका लागि प्रेरित गर।

अध्वर्यवो यः स्वश्नं जघान यः शुष्णमशुषं यो व्यंसम्।
यः पिप्रुं नमुचिं यो रुधिक्रां तस्मा इन्द्रायान्धसो जुहोत ॥५॥

इन्द्रदेवले अश्न, शोषण गर्ने शुष्ण, बिनाभुजाको अहि, पिप्रु, नमुचि र रुधिक्रा नामका असुरहरूको वध गरे, ती इन्द्रदेवलाई विभिन्न हविष्यान्नको आहुति समर्पित गर।

अध्वर्यवो यः शतं शम्बरस्य पुरो बिभेदाश्मनेव पूर्वीः।
यो वर्चिनः शतमिन्द्रः सहस्रमपावपद्भरता सोमस्मै ॥६॥

हे अध्वर्युहरू हो ! शम्बर राक्षसका सय वटा पुराना सहर जुन इन्द्रदेवले शक्तिशाली वज्रले हानेर ध्वंस गराए, वर्चीकका हजार छोराहरूलाई धराशायी पारे, ती इन्द्रदेवका निम्ति सोम प्रदान गर।

अध्वर्यवो यः शतमा सहस्रं भूम्या उपस्थेऽवपज्जघन्वान्।
कुत्सस्यायोरतिथिग्वस्य वीरान्न्यावृणग्भरता सोममस्मै ॥७॥

हे अध्वर्युहरू हो ! जुन इन्द्रदेवले सयौं पटक हजारौं असुर मारेर भूमिमा सोत्तर गराए, जसले कुत्स, आयु र अतिथिग्वसित रिस गर्नेहरूलाई वध गरे उनै इन्द्रदेवका निमित्त सोम एकत्र गर।

अध्वर्यवो यन्नरः कामयाध्वे श्रुष्टी वहन्तो नशथा तदिन्द्रे।
गभस्तिपूतं भरत श्रुतायेन्द्राय सोमं यज्यवो जुहोत ॥८॥

हे अध्वर्युहरू हो ! नेताजस्ता इन्द्रदेवलाई हविष्यान्न प्रदान गरेर आफ्ना मनले रहर गरेअनुसारका वस्तु प्राप्त गर। औंलाले प्रशोधन गरेको सोम यशस्वी इन्द्रदेवलाई प्रदान गर्दै आहुति देओ।

अध्वर्यवः कर्तना श्रुष्टिमस्मै वने निपूतं वन उन्नयध्वम्।
जुषाणो हस्त्यमभि वावशे व इन्द्राय सोमं मदिरं जुहोत ॥९॥

हे अध्वर्युहरू हो ! काठका भाँडामा प्रशोधित सोमरस राखेर इन्द्रदेवनजिकै पुऱ्याओ। सोमपान गर्ने इन्द्रले तिमीहरूका हातको सोमरस रुचाउँछन्। त्यसैले इन्द्रदेवलाई हर्षित गर्ने सोमको आहुति अर्पण गर।

अध्वर्यवः पयसोधर्यथा गोः सोमेभिरीं पृणता भोजमिन्द्रम्।
वेदाहमस्य निभृतं म एतद्दित्सन्तं भूयो यजतश्चिकेत ॥१०॥

हे अध्वर्युहरू हो ! दुधले गाईका थुन भरिइरहेझैं भोज्य पदार्थ प्रदान गर्ने इन्द्रदेवलाई सोमद्वारा सन्तुष्ट गराओ। यसो हुँदा पूज्य इन्द्रदेव दाता यजमानलाई अझै धेरै ऐश्वर्य प्रदान गर्नेछन्। यस गोप्य रहस्यलाई हामीले राम्ररी जानेका छौं।

अध्वर्यवो यो दिव्यस्य वस्वो यः पार्थिवस्य क्षम्यस्य राजा।
तमूर्दरं न पृणता यवेनेन्द्रं सोमेभिस्तदपो वो अस्तु ॥११॥

हे अध्वर्यु हो ! द्युलोक, पृथ्वी र अन्तरिक्षमा उत्पन्न सबै ऐश्वर्यका स्वामी इन्द्रदेव हुन्। जौ आदि अन्नले ढुकुटी भरेर राखेझैं सोमरसले इन्द्रदेवलाई सधैं पूर्ण गराओ।

अस्मभ्यं तद्वसो दानाय राधः समर्थयस्व बहु ते वसव्यम्।
इन्द्र यच्चित्रं श्रवस्या अनु द्यून्बृहद्वदेम विदथे सुवीराः ॥१२॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! तिमी महान् ऐश्वर्यले युक्त छौ। त्यसैले असल कार्यका निमित्त हामीलाई धन प्रदान गर। हामी सधैं तिम्रो धन प्राप्त गर्ने कामना गर्दछौं। हामी यस यज्ञमा छोरानातिसहित उत्तम स्तोत्र गाउँदै तिमीलाई स्तुति गर्दछौं।

## [सूक्त - १५]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

प्र घा न्वस्य महतो महानि सत्या सत्यस्य करणानि वोचम्।
त्रिकद्रुकेष्वपिबत्सुतस्यास्य मदे अहिमिन्द्रो जघान ॥१॥

महान् सङ्कल्पधारी इन्द्रदेवको यथार्थ र महान् कर्मको हामी यशोगान गर्दछौं। इन्द्रदेवले तीनै लोकमा व्याप्त सोमपान गरेर आनन्दित भएपछि अहि राक्षसको वध गरे।

अवंशे द्यामस्तभायद् बृहन्तमा रोदसी अपृणदन्तरिक्षम्।
स धारयत्पृथिवीं पप्रथच्च सोमस्य ता मद इन्द्रश्चकार ॥२॥

सोमरस पान गरेर उत्साहित भएका इन्द्रदेवले स्तम्भविना नै द्युलोक अन्तरिक्षमा अड्याए। ती दुवै लोकलाई आफ्नो सत्ताले जीवन्त गराएपछि पृथ्वीलाई धारण गर्दै त्यसको विस्तार गरे।

सद्मेव प्राचो वि मिमाय मानैर्वज्रेण खान्यतृणन्नदीनाम्।
वृथासृजत्पथिभिर्दीर्घयाथैः सोमस्य ता मद इन्द्रश्चकार ॥३॥

सोमरस पान गरेर उत्साहित भएका इन्द्रदेवले सारा संसार मापन गरेर पूर्वतिर फर्काए। वज्रका प्रहारले लामो समयसम्म सजिलै प्रवाहित हुने गरी नदीको मार्ग खुलाए।

स प्रवोऽह्नन्परिगत्या दभीतेर्विश्वमधागायुधमिद्धे अग्नौ।
सं गोभिरश्वैरसृजद्रथेभिः सोमस्य ता मद इन्द्रश्चकार ॥४॥

सोमरस पानबाट आनन्दित भएका इन्द्रदेवले दभीति ऋषिलाई अपहरण गरेर लगिरहेका असुरहरूको बाटो छेकेर आयुधबाट आगो बर्साउँदै तिनलाई डढाएर मारिदिए। दभीति ऋषिलाई इन्द्रदेवले गाई, घोडा र रथले सम्पन्न गराए।

स ईं महीं धुनिमेतोररम्णात्सो अस्नातॄनपारयत्स्वस्ति।
त उत्स्नाय रयिमभि प्र तस्थुः सोमस्य ता मद इन्द्रश्चकार ॥५॥

सोमरस पानबाट उत्साहित भएका इन्द्रदेवले पारि तर्न नसक्नेहरूका लागि विशाल नदीको प्रवाह मन्द गराइदिए। त्यसै नदीबाट पारि पुगेका ऋषिहरू ऐश्वर्य प्राप्त गर्ने लक्ष्य लिएर अगाडि बढ्दछन्।

सोदञ्चं सिन्धुमरिणान्महित्वा वज्रेणान उषसः सं पिपेष।
अजवसो जविनीभिर्विवृश्चन्त्सोमस्य ता मद इन्द्रश्चकार ॥६॥

सोमरस पान गरेर आनन्द मनाएका इन्द्रदेवले पराक्रमपूर्वक नदीको प्रवाह उत्तर दिशमा फर्काए। उनले आफ्ना द्रुतगामी सेनाले उषाको कमजोर सेना नष्ट गर्दै उषाको रथ पनि भताभुङ्ग बनाइदिएका थिए।

स विद्वाँ अपगोहं कनीनामाविर्भवन्नुदतिष्ठत्परावृक्।
प्रति श्रोणः स्थाद्व्यनगचष्ट सोमस्य ता मद इन्द्रश्चकार ॥७॥

खोरन्डा र चक्षुहीन परावृक् ऋषिले बिहा गर्न लाग्दा कन्या भागेपछि ऋषिले इन्द्रदेवको स्तुति गरे। ती ऋषिको स्तुति र सोमरस पानबाट आनन्दित भएका इन्द्रदेवले ऋषिलाई गोडा र आँखा प्रदान गरेका थिए।

भिनद्वलमङ्गिरोभिर्गृणानो वि पर्वतस्य दृंहितान्यैरत्।
रिणग्रोधांसि कृत्रिमाण्येषां सोमस्य ता मद इन्द्रश्चकार ॥८॥

अङ्गिरा आदि स्तोताका स्तुतिबाट प्रसन्न भएर र सोमरस पान गरेका उत्साहले इन्द्रदेवले पर्वतका बलिया ढोका खोले। त्यहाँ असुरले रचेको बाधा पन्छाउँदै बल नामका असुरलाई गिँडिदिए।

स्वप्नेनाभ्युप्या चुमुरिं धुनिं च जघन्थ दस्युं प्र दभीतिमावः।
रम्भी चिदत्र विविदे हिरण्यं सोमस्य ता मद इन्द्रश्चकार ॥९॥

हे इन्द्रदेव ! सोमरस पान गरेका उत्साहबाट दभीतिको रक्षा गर्नका लागि तिमीले चुमुरी र धुनी नामका राक्षसलाई सधैँका लागि निदाउने गरी सुताइदियौ। यस्ता अवसरमा दण्डधारीहरूले धन प्राप्त गरे।

नूनं सा ते प्रति वरं जरित्रे दुहीयदिन्द्र दक्षिणा मघोनी।
शिक्षा स्तोतृभ्यो माति धग्भगो नो बृहद्वदेम विदथे सुवीराः ॥१०॥

हे इन्द्रदेव ! तिम्रो ऐश्वर्यसम्पन्न दक्षिणा स्तोताका लागि वरदायक हुन्छ। त्यो हामीलाई पनि प्रदान गर। हामीलाई तिमी नत्याग, ऐश्वर्ययुक्त गराऊ। हामी छोरानातिका साथ यज्ञमा महान् स्तोत्रले तिमीलाई स्तुति गर्दछौँ।

[सूक्त - १६]

**ऋषि** – गृत्समद भार्गव शौनक। **देवता** – इन्द्र। **छन्द** – जगती त्रिष्टुप्।

प्र वः सतां ज्येष्ठतमाय सुष्टुतिमग्नाविव समिधाने हविर्भरे।
इन्द्रमजुर्यं जरयन्तमुक्षितं सनाद्युवानमवसे हवामहे ॥१॥

देवताहरूमा सर्वश्रेष्ठ इन्द्रदेवका निम्ति हामी अत्यन्त दीप्तिमान् अग्निमा सुन्दर स्तुति गर्दै आहुति चढाउँछौँ। ती सनातन शक्तिसम्पन्न, कहिल्यै नष्ट नहुने, शत्रुनाशक तथा सोमले तृप्त हुने इन्द्रदेवलाई आह्वान तिमीहरूका लागि गर्दछौँ।

यस्मादिन्द्राद् बृहतः किं चनेमृते विश्वान्यस्मिन्त्सम्भृताधि वीर्या।
जठरे सोमं तन्वी३ सहो महो हस्ते वज्रं भरति शीर्षणि क्रतुम् ॥२॥

यस विराट् संसारमा इन्द्रदेव नै सबैभन्दा वरिष्ठ छन्। ती पराक्रमले युक्त इन्द्रदेव पेटमा सोमरस, शरीरमा तेजस्वी बल, हातमा वज्र र शिरमा महान् ज्ञानले सम्पन्न छन्।

न क्षोणीभ्यां परिभ्वे त इन्द्रियं न समुद्रैः पर्वतैरिन्द्र ते रथः।
न ते वज्रमन्वश्नोति कश्चन यदाशुभिः पतसि योजना पुरु ॥३॥

हे इन्द्रदेव ! तिमी जब आफ्ना द्रुतगामी अश्वबाट अनेक योजन यात्रा गर्दछौ, त्यस बेला तिम्रो शक्ति द्यावापृथिवीले पनि नाप्न सक्दैनन्। हे इन्द्रदेव ! तिम्रा रथलाई समुद्र वा पर्वतले पनि रोक्न सक्दैनन् र कुनै शक्तिशाली वीरले तिम्रा वज्रलाई रोक्न सक्दैन।

विश्वे ह्यस्मै यजताय धृष्णवे क्रतुं भरन्ति वृषभाय सश्चते।
वृषा यजस्व हविषा विदुष्टरः पिबेन्द्र सोमं वृषभेण भानुना ॥४॥

शत्रुनाशक, पूज्य, बलशाली र स्तुत्य इन्द्रदेवका निमित्त सबै मानिसले यज्ञ गर्दछन्। हे यजमान हो ! तिमीहरू देवगणलाई सोमरस प्रदान गर्ने हुनाले मेधावान् छौ। त्यसैले हविष्यान्नको आहुतिसहित इन्द्रदेवको स्तुति गर। हे इन्द्रदेव ! तिमी बलशाली एवं तेजस्वीभैँ सोमरस पान गर।

वृष्णः कोशः पवते मध्व ऊर्मिर्वृषभान्नाय वृषभाय पातवे।
वृषणाध्वर्यू वृषभासो अद्रयो वृषणं सोमं वृषभाय सुष्वति ॥५॥

तृप्तिकारक, बलवर्धक, अन्नयुक्त र मधुर सोमरसको धारो बलशाली इन्द्रदेवले पान गर्नका लागि बहन्छ। अध्वर्युहरू बलशाली इन्द्रदेवलाई बलिया ढुङ्गामा पुष्टिकारक सोमरस तयार गर्दछन्।

वृषा ते वज्र उत ते वृषा रथो वृषणा हरी वृषभाण्यायुधा।
वृष्णो मदस्य वृषभ त्वमीशिष इन्द्र सोमस्य वृषभस्य तृप्णुहि ॥६॥

हे शक्तिशाली इन्द्रदेव ! तिम्रो वज्र, तिम्रो रथ, तिम्रा अश्वहरू र तिम्रा आयुध यी सबै शक्तिले भरिपूर्ण छन्। तिमी शक्तिशाली आनन्दका स्वामी हौ। त्यसैले बलयुक्त सोमरस पान गरेर तिमी तृप्त होऊ।

प्र ते नावं न समने वचस्युवं ब्रह्मणा यामि सवनेषु दाधृषिः।
कुविन्नो अस्य वचसो निबोधिषदिन्द्रमुत्सं न वसुनः सिचामहे ॥७॥

हे इन्द्रदव ! तिमी शत्रुनाशक हौ। नौकाले नदी तारेभैँ तिमी युद्धमा स्तोतालाई उद्धार गर्दछौ। हामी तिम्रो स्तोत्र उच्चारण गर्दै यज्ञस्थलमा जान्छौँ। हे ऐश्वर्यका भण्डारजस्ता इन्द्रदेव ! हामी इनारजस्तो भएर सोमरसले तिमीलाई सेचन गर्दछौँ। हाम्रो प्रार्थना तिमी स्वीकार गर।

पुरा सम्बाधादभ्या ववृत्स्व नो धेनुर्न वत्सं यवसस्य पिप्युषी।
सकृत्सु ते सुमतिभिः शतक्रतो सं पत्नीभिर्न वृषणो नसीमहि ॥८॥

हे शतकर्मा इन्द्रदेव ! घाँस खाइसकेपछि अघाएको गाई बाछालाई दुध चुसाउन पुगेभैँ आपद् आइलाग्नुभन्दा पहिले नै तिमी हामीकहाँ आइपुग। हे इन्द्रदेव ! पत्नीले पतिलाई सन्तुष्ट गराएभैँ हामी उत्तम स्तोत्रले तिमीलाई प्रसन्न गराउँछौँ।

नूनं सा ते प्रति वरं जरित्रे दुहीयदिन्द्र दक्षिणा मघोनी।
शिक्षा स्तोतृभ्यो माति धग्भगो नो बृहद्वदेम विदथे सुवीराः ॥९॥

हे इन्द्रदेव ! यज्ञका समयमा तिमीले स्तोतालाई दिएको ऐश्वर्ययुक्त दक्षिणाले निश्चित नै उत्तम धन प्राप्त गराउँछ। स्तोताका साथ हामीलाई पनि ऐश्वर्ययुक्त दक्षिणा प्रदान गर। हामी यज्ञमा महान् पराक्रम प्रदान गर्ने स्तोत्र उच्चारण गरौं।

## [सूक्त - १७]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - इन्द्र। **छन्द** - जगती त्रिष्टुप्।

तदस्मै नव्यमङ्गिरस्वदर्चत शुष्मा यदस्य प्रत्नथोदीरते।
विश्वा यद्गोत्रा सहसा परीवृता मदे सोमस्य दृंहितान्यैरयत् ॥१॥

इन्द्रदेवको पराक्रम आदि कालभैँ बढिरहेको छ। इन्द्रदेवले सोमरस पान गरेपछि उत्साहित भएर शत्रुका सबै बलिया किल्ला आफ्नै बलले सखाप पारे। हे स्तोता हो ! अङ्गिराहरूले भैँ तिमीहरू पनि उत्तम स्तुतिद्वारा इन्द्रदेवको उपासना गर।

स भुतु यो ह प्रथमाय धायस ओजो मिमानो महिमानमातिरत्।
शूरो यो युत्सु तन्वं परिव्यत शीर्षणि द्यां महिना प्रत्यमुञ्चत ॥२॥

बल बढाउनका लागि सर्वभन्दा पहिले सोमरस पान गर्ने इन्द्रदेवको बल सधैं उस्तै रहोस्। शत्रुनाशक इन्द्रदेवले सङ्ग्राममा शरीरमा कवच धारण गरेर आफ्ना महानताले द्युलोकलाई आफ्ना शिरमा धारण गरे।

अधाकृणोः प्रथमं वीर्यं महद्यदस्याग्रे ब्रह्मणा शुष्ममैरयः।
रथेष्ठेन हर्यश्वेन विच्युताः प्र जीरयः सिस्रते सध्र्यक् पृथक् ॥३॥

हे इन्द्रदेव ! स्तोताका स्तुतिले प्रसन्न भएर, शत्रुनाशक बल देखाउँदै तिमीले महान् पराक्रम प्रकट गऱ्यौ। समर्थ घोडा भएका रथमा आरूढ तिम्रो शत्रुनाशक स्वरूप देखेर असुरको समूह छरपस्ट भएर भाग्यो।

अधा यो विश्वा भुवनाभि मज्मनेशानकृत्प्रवया अभ्यवर्धत।
आद्रोदसी ज्योतिषा वह्निरातनोत्सीव्यन्तमांसि दुधिता समव्ययत् ॥४॥

सबैभन्दा उत्कृष्ट बलशाली इन्द्रदेवले आफ्ना महान् पराक्रमले सबै भुवनको विस्तार गरेर सबैका अधिपति भए। त्यसपछि द्यावापृथिवीलाई आफ्ना तेजले व्याप्त गरे अनि टाढासम्म भरिएको अन्धकार सूर्यले झैँ नष्ट गराए।

स प्राचीनान्पर्वतान्दृंहदोजसाधराचीनमकृणोदपामपः।
अधारयत्पृथिवीं विश्वधायसमस्तभ्नान्मायया द्यामवस्रसः ॥५॥

महान् इन्द्रदेवले आफ्नै सामर्थ्यले सबैलाई आश्रय प्रदान गर्ने पृथ्वीलाई धारण गरे र द्युलोक तल खस्न नपाओस् भनेर थामिराखे। चट्पटाउने पर्वतलाई आफ्नै शक्तिले स्थिर गराए र पानीका धारलाई ओरालोतिर बगाए।

सास्मा अरं बाहुभ्यां यं पिताकृणोद्विश्वस्मादा जनुषो वेदसस्परि।
येना पृथिव्यां नि क्रिविं शयध्यै वज्रेण हत्व्यवृणक्तुविष्वणिः ॥६॥

जन्ममरणशील जीवका पालनकर्ता इन्द्रदेवले आफ्नो वज्र सबै तिरबाट समर्थ बनाए। विद्युतसरिको गर्जना गर्ने वज्रका सहायताले इन्द्रदेवले क्रिवी नामका राक्षसलाई मारेर पृथ्वीमा ढलाइदिए। त्यस वज्रले इन्द्रदेवका पाखुरीलाई शक्तिशाली बनाओस्।

अमाजूरिव पित्रोः सचा सती समानादा सदसस्त्वामिये भगम्।
कृधि प्रकेतमुप मास्या भर दद्धि भागं तन्वोऽयेन मामहः ॥७॥

आमबाबुसित बसेकी छोरीले उनीहरूसितै खाइगुजाराको माग गरेझैँ हे देव ! हामी तिमीसित ऐश्वर्यको माग गर्दछौँ। जुन ऐश्वर्यले तिमी स्तोताहरूलाई महान् बनाउँछौ, हाम्रा लागि त्यही उपयोगी अन्न र श्रेष्ठ धन प्रदान गर।

भोजं त्वामिन्द्र वयं हुवेम ददिष्ट्वमिन्द्रापांसि वाजान्।
अविड्ढीन्द्र चित्रया न ऊती कृधि वृषन्निन्द्र वस्यसो नः ॥८॥

हे इन्द्रदेव ! तिमी असल काम गर्ने र अन्नदाता हौ। पालनकर्ताका रूपमा बारम्बार हामी तिमीलाई आह्वान गर्दछौँ। तिमी रक्षा साधनले युक्त भएर हामीलाई संरक्षण प्रदान गर। हे कामना पूर्ति गराउने इन्द्रदेव ! हामीलाई तिमी ऐश्वर्यशाली गराऊ।

नूनं सा ते प्रति वरं जरित्रे दुहीयदिन्द्र दक्षिणा मघोनी।
शिक्षा स्तोतृभ्यो माति धग्भगो नो बृहद्वदेम विदथे सुवीराः ॥९॥

हे इन्द्रदेव ! यज्ञका समयमा तिमीले स्तोतालाई दिएको ऐश्वर्ययुक्त दक्षिणाले निश्चित रूपमा धन प्रदान गर्दछ। त्यसैले स्तोताहरूका साथै हामीलाई पनि त्यही ऐश्वर्य प्रदान गर। त्यसै कारण हामी यज्ञमा महान् पराक्रम प्रदान गर्ने स्तोत्रले स्तुति गरौँ।

[सूक्त - १८]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

प्राता रथो नवो योजि सस्निश्चतुर्युगस्त्रिकशः सप्तरश्मिः।
दशारित्रो मनुष्यः स्वर्षाः स इष्टिभिर्मतिभी रंह्यो भूत् ॥१॥

बिहानीपख नयाँ रथ तयार गरिएको छ। यसमा चार जुवा, तीन कोर्रा, सात लगाम र दस पाङ्ग्रा छन्। यो लक्षित प्रयोजनका लागि मनको इच्छाअनुसार चल्छ। यसले मानिसलाई स्वर्गसम्म पुऱ्याउँछ।

सास्मा अरं प्रथमं स द्वितीयमुतो तृतीयं मनुषः स होता।
अन्यस्या गर्भमन्य ऊ जनन्त सो अन्येभिः सचते जेन्यो वृषा ॥२॥

यो रथ इन्द्रदेवलाई पहिलो, दोस्रो र तेस्रो तीनै सवनमा यज्ञमा पुऱ्याउन समर्थ छ। यही रथ

मानिसका कामना पूरा गराउन सक्छ। स्तोताहरू एकापसमा मिलेर ब्रह्माण्डव्यापी, बलशाली र अजेय उनै इन्द्रदेवको अनुग्रह प्राप्त गर्दछन्।

**हरी नु कं रथ इन्द्रस्य योजमायै सूक्तेन वचसा नवेन।**
**मो षु त्वामत्र बहवो हि विप्रा नि रीरमन्यजमानासो अन्ये ॥३॥**

इन्द्रदेवलाई सजिलै आवतजावत गर्नका लागि उत्तम स्तुतिका माध्यमबाट उनका रथमा दुई वटा घोडा नारिएका छन्। हे इन्द्रदेव ! हाम्रा अतिरिक्त अरू कुनै पनि मेधावी स्तोताले तिमीलाई राम्री सन्तुष्ट गर्न सक्दैन।

**आ द्वाभ्यां हरिभ्यामिन्द्र याह्या चतुर्भिरा षड्भिर्हूयमानः।**
**आष्टाभिर्दशभिः सोमपेयमयं सुतः सुमख मा मृधस्कः ॥४॥**

हे इन्द्रदेव ! हामीले बोलाउँदा सोमरस पान गर्नका लागि दुई, चार, आठ र दस घोडामा आऊ। सोमरस तिम्रै लागि प्रशोधित गरिएको हो पान गर। यसैका लागि युद्ध नगर।

**आ विंशत्या त्रिंशता याह्यर्वाङा चत्वारिंशता हरिभिर्युजानः।**
**आ पञ्चाशता सुरथेभिरिन्द्र षष्ट्या सप्तत्या सोमपेयम् ॥५॥**

हे इन्द्रदेव ! तिमी सोमरस पान गर्नका लागि रथमा बीस, तीस, चालीस, साठी र सत्तरी योग्य घोडाहरू जोतेर हामीकहाँ आऊ।

**आशीत्या नवत्या याह्यर्वाङा शतेन हरिभिरुह्यमानः।**
**अयं हि ते शुनहोत्रेषु सोम इन्द्र त्वाया परिषिक्तो मदाय ॥६॥**

हे इन्द्रदेव ! तिमीलाई आनन्दित गर्नका लागि सोमरसलाई राम्रा भाँडामा राखिएको छ। त्यसैले तिमी असी, नब्बे र सय घोडालाई आफ्नो रथमा जोतेर हामीकहाँ आऊ।

**मम ब्रह्मेन्द्र याह्यच्छा विश्वा हरी धुरि धिष्वा रथस्य।**
**पुरुत्रा हि विहव्यो बभूथास्मिञ्छूर सवने मादयस्व ॥७॥**

हे इन्द्रदेव ! तिमी धेरैबाट आमन्त्रित गरिएका छौ। त्यसैले हाम्रो स्तोत्र स्वीकार गरेर आफ्ना रथमा सबै घोडा जोतेर हाम्रा यस यज्ञमा आएर आनन्दित होऊ।

**न म इन्द्रेण सख्यं वि योषदस्मभ्यमस्य दक्षिणा दुहीत।**
**उप ज्येष्ठे वरूथे गभस्तौ प्रायेप्राये जिगीवांसः स्याम ॥८॥**

इन्द्रदेवसित हाम्रो मैत्री अटुट रहोस्। हामी उनका शुभ दाहिने हातका नजिकै रहौं। इन्द्रदेवबाट हामीलाई सधैँ दान प्राप्त भइरहोस्। यिनैका संरक्षणमा हामी प्रत्येक युद्धमा विजयी होऔं।

**नूनं सा ते प्रति वरं जरित्रे दुहीयदिन्द्र दक्षिणा मघोनी।**
**शिक्षा स्तोतृभ्यो माति धग्भगो नो बृहद्वदेम विदथे सुवीराः ॥९॥**

हे इन्द्रदेव ! यज्ञका समयमा तिमीले स्तोतालाई दिएको ऐश्वर्ययुक्त दक्षिणाले निश्चित रूपले धन प्रदान गर्दछ। त्यसैले स्तोताहरूसँगै हामीलाई पनि त्यही ऐश्वर्य प्रदान गर। त्यसै कारण हामी यज्ञमा महान् पराक्रम प्रदान गर्ने स्तोत्रले स्तुति गरौं।

## [सूक्त - १९]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

**अपाय्यस्यान्धसो मदाय मनीषिणः सुवानस्य प्रयसः।**
**यस्मिन्निन्द्रः प्रदिवि वावृधान ओको दधे ब्रह्मण्यन्तश्च नरः ॥१॥**

सोमरस परिष्कृत गर्ने ज्ञानी यजमानले आनन्द प्रदान गर्नका लागि दिएको अन्न इन्द्रले ग्रहण गरुन्। ती इन्द्रदेव र ज्ञानी यजमानले उच्च स्थान प्राप्त गरुन्।

**अस्य मन्दानो मध्वो वज्रहस्तोऽहिमिन्द्रो अर्णोवृतं वि वृश्चत्।**
**प्र यद्वयो न स्वसराण्यच्छा प्रयांसि च नदीनां चक्रमन्त ॥२॥**

चराहरू आफ्ना गुणमा फर्किएझैं नदीका धाराहरू बग्दछन्। त्यसरी नै धारो लागेको सोमरस पान गरे र आनन्दित हुँदै हातमा वज्र लिएर इन्द्रदेवले जललाई रोकिराख्ने अहि नामका राक्षसलाई मारिदिएका थिए।

स माहिन इन्द्रो अर्णो अपां प्रैरयदहिहाच्छा समुद्रम्।
अजनयत्सूर्यं विदद्गा अक्तुनाह्नां वयुनानि साधत् ॥३॥

अहि नामको राक्षस मार्ने इन्द्रदेवले अन्तरिक्षका जललाई सोझै समुद्रतर्फ प्रवाहित गरे। उनैले सूर्यको किरण प्रकट गराए। किरणका प्रकाशले हामी दिउँसोका काम गर्दछौं।

सो अप्रतीनि मनवे पुरूणीन्द्रो दाशद्दाशुषे हन्ति वृत्रम्।
सद्यो यो नृभ्यो अतसाय्यो भूत्पस्पृधानेभ्यः सूर्यस्य सातौ ॥४॥

इन्द्रदेव सूर्यजत्तिकै तेजस्वी स्वरूप प्राप्त गर्नका लागि सधैं एकसमान रूपले प्रयास गरिरहन्छन्। दानशील इन्द्रदेव मानिसका लागि मूल्यवान् धन प्रदान गर्दछन्। उनैले वृत्र राक्षसलाई मार्दछन्।

स सुन्वत इन्द्रः सूर्यमा देवो रिणङ्मर्त्याय स्तवान्।
आ यद्रयिं गुहदवद्यमस्मै भरदंशं नैतशो दशस्यन् ॥५॥

पुत्रलाई पिताले धनको अंश दिएझैं इन्द्रदेवलाई दान दाता एतशले यज्ञका समयमा अमूल्य र उत्तम धन प्रदान गरे। त्यस बेला पूज्य तथा तेजस्वी इन्द्रदेवले यज्ञको कामना गर्ने मानिसका लागि सूर्यलाई प्रकट गराए।

स रन्धयत्सदिवः सारथये शुष्णमशुषं कुयवं कुत्साय।
दिवोदासाय नवतिं च नवेन्द्रः पुरो व्यैरच्छम्बरस्य ॥६॥

तेजस्वी इन्द्रदेवले सारथि कुत्सका निमित्त शुष्ण, अशुष र कुयव नामका असुरको संहार गरे र दिवोदासका निम्ति शम्बासुरका उनान्सय सहर ध्वस्त गराए।

एवा त इन्द्रोचथमहेम श्रवस्या न त्मना वाजयन्तः।
अश्याम तत्साप्तमाशुषाणा ननमो वधरदेवस्य पीयोः ॥७॥

हे इन्द्रदेव ! हामी अन्न र बलका आशाले तिम्रो स्तुति गर्दछौं। देवताको अपहेला गर्ने र हिंसक दुष्टको हिंसक कृत्य नष्ट गरायौ। तिमीसँग हामी अटुट मैत्री राखिरहौं।

एवा ते गृत्समदाः शूर मन्मावस्यवो न वयुनानि तक्षुः।
ब्रह्मण्यन्त इन्द्र ते नवीय इषमूर्जं सुक्षितिं सुम्नमश्युः ॥८॥

हे शूरवीर इन्द्रदेव ! गृत्समदहरू आफ्नो उत्तम संरक्षणका आशाले उत्तम एवं मनोरम स्तोत्रले तिम्रो स्तुति गर्दछन्। उसै गरी नयाँ ब्रह्मज्ञानी स्तोताहरू पनि उत्तम आश्रय, अन्न, बल र सुख पाउनका लागि यसरी नै स्तुति गर्दछन्।

नूनं सा ते प्रति वरं जरित्रे दुहीयदिन्द्र दक्षिणा मघोनी।
शिक्षा स्तोतृभ्यो माति धग्भगो नो बृहद्वदेम विदथे सुवीराः ॥९॥

हे इन्द्रदेव ! यज्ञका समयमा तिमीले स्तोतालाई दिएको ऐश्वर्ययुक्त दक्षिणाले निश्चित रूपमा धन प्रदान गर्दछ। त्यसैले स्तोताहरूसँगै हामीलाई पनि त्यही ऐश्वर्य प्रदान गर। त्यसै कारण हामी यज्ञमा महान् पराक्रम प्रदान गर्ने स्तोत्रले स्तुति गरौं।

[सूक्त - २०]

ऋषि - गृत्समद भार्गव शौनक। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

वयं ते वय इन्द्र विद्धि षु णः प्र भरामहे वाजयुर्न रथम्।
विपन्यवो दीध्यतो मनीषा सुम्नमियक्षन्तस्त्वावतो नॄन् ॥१॥

हे इन्द्रदेव ! अन्नको खोजी गर्नेले जसरी आफ्नो रथ अन्नले भर्दछन्। उसै गरी हामी स्तोताहरू तेजस्वी बुद्धिका हुनाले तिमीबाट सुखको कामना गर्दै तिम्रा लागि हवि प्रदान गर्दछौं। हाम्रो यो कार्य तिमी राम्रोसित बुझ।

त्वं न इन्द्र त्वाभिरूती त्वायतो अभिष्टिपासि जनान्।
त्वमिनो दाशुषो वरूतेत्थाधीरभि यो नक्षति त्वा ॥२॥

हे इन्द्रदेव ! तिमीलाई जसले आफ्नो इष्ट मानेको छ, त्यस्तो दानशील मानिस नजिक आउँदा तिमी अनेकौं किसिमले त्यसको रक्षा गर्दछौ। तिमी आपद्बाट जोगाउने, सत्कर्मी र न्यायशील हौ। त्यसैले आफ्ना रक्षा साधनले हामीलाई संरक्षण देऊ।

सनो युवेन्द्रो जोहूत्रः सखा शिवो नरामस्तु पाता।
य: शंसन्तं यः शशमानमूती पचन्तं च स्तुवन्तं च प्रणेषत् ॥३॥

स्तोत्र उच्चारण गर्ने, उत्तम निर्देश दिने, हविष्यान्न तयार गर्ने र यजमानलाई संरक्षण दिएर तिमी आपद्‌बाट जोगाउँछौ। नित्य तरुण, मित्रवत् सधैं नजिक बोलाउन योग्य र सुखका स्वरूप इन्द्रदेवले समस्त प्रजाका साथै हाम्रो रक्षा गरुन्।

तमु स्तुष इन्द्रं तं गृणीषे यस्मिन्पुरा वावृधुः शाशदुश्च।
स वस्वः कामं पीपरदियानो ब्रह्मण्यतो नूतनस्यायोः ॥४॥

इन्द्रदेवको शरणमा स्तोताले उन्नति गर्दछन् र शत्रुको विनाश गर्दछन्। इन्द्रदेवका कीर्ति गाउँदै हामी स्तुति गर्दछौं। स्तुत्य इन्द्रदेवले नयाँ यजमानको धनको रहर पूरा गर्दछन्।

सो अङ्गिरसामुचथा जुजुष्वान्ब्रह्मा तूतोदिन्द्रो गातुमिष्णन्।
मुष्णन्नुषसः सूर्येण स्तवानश्नस्य चिच्छिश्नथत्पूर्व्याणि ॥५॥

अङ्गिराहरूको स्तुति स्वीकार गरेर इन्द्रदेव उत्तम बाटो देखाउँदै ज्ञानगुन बढाइदिन्छन्। स्तुत्य इन्द्रदेवले सूर्यलाई प्रकट गर्दछन् र उषाको हरण गर्ने अश्नासुरको नाश गर्दछन्।

स ह श्रुत इन्द्रो नाम देव ऊर्ध्वो भुवन्मनुषे दस्मतमः।
अव प्रियमर्शसानस्य साह्वाञ्छिरो भरद्दासस्य स्वधावान् ॥६॥

तेजस्वी, कीर्तिवान्, ख्यातिप्राप्त, अत्यन्त सुन्दर र प्रिय इन्द्रदेव ज्ञानवान् स्तोताको संरक्षण गर्न सधैं तयार हुन्छन्। शत्रुनाशक इन्द्रदेवले संसारको अनिष्टकर्ता दास नामका असुरलाई नाश गरे।

स वृत्रहेन्द्रः कृष्णयोनीः पुरन्दरो दासी रैरयद्वि।
अजनयन्मनवे क्षामपश्च सत्रा शंसं यजमानस्य तूतोत् ॥७॥

वृत्रहन्ता र शत्रुका किल्ला भत्काउने इन्द्रदेवले कृष्णदासका सेनाको संहार गरे। मानिसका लागि पृथिवी र जल उत्पन्न गरे। यस्ता महान् इन्द्रदेवले यजमानको उचित रहर पूरा गरुन्।

तस्मै तवस्य१ मनु दायि सत्रेन्द्राय देवेभिरर्णसातौ।
प्रति यदस्य वज्रं बाह्वोर्धुर्हत्वी दस्यून्पुर आयसीर्नि तारीत् ॥८॥

सङ्गठित भएका योद्धाहरूले युद्धमा निरन्तर इन्द्रदेवलाई बल प्रदान गरे। इन्द्रदेवले बलशाली भुजामा वज्र धारण गर्दै दुष्टको संहार गरे र उनीहरूका अनकन्टार गाउँ पनि ध्वस्त पारे।

नूनं सा ते प्रति वरं जरित्रे दुहीयदिन्द्र दक्षिणा मघोनी।
शिक्षा स्तोतृभ्यो माति धग्भगो नो बृहद्वदेम विदथे सुवीराः ॥९॥

हे इन्द्रदेव ! यज्ञका समयमा तिमीले स्तोतालाई दिएको ऐश्वर्ययुक्त दक्षिणाले निश्चित रूपमा धन प्रदान गर्दछ। त्यसैले स्तोतासँगै हामीलाई त्यही ऐश्वर्य प्रदान गर। त्यसै कारण हामी यज्ञमा महान् पराक्रम प्रदान गर्ने स्तोत्रहरूले स्तुति गरौं।

[सूक्त - २१]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - इन्द्र। **छन्द** - जगती त्रिष्टुप्।

विश्वजिते धनजिते स्वर्जिते सत्राजिते नृजित उर्वराजिते।
अश्वजिते गोजिते अब्जिते भरेन्द्राय सोमं यजताय हर्यतम् ॥१॥

हे याजकहरू हो ! सिङ्गो विश्व जित्ने, विश्वको धन जित्ने, सङ्गठित भएर शत्रु जित्ने, मानिसलाई जित्ने, उब्जाउ भूमि जित्ने, घोडा जित्ने, गाई जित्ने र जल वा तरल पदार्थ आफ्नो वशमा गराउने पूज्य इन्द्रदेवका निमित्त तेजस्वी सोमरस प्रदान गर।

अभिभुवेऽभिभङ्गाय वन्वतेऽषाळ्हाय सहमानाय वेधसे।
तुविग्रये वह्नये दुष्टरीतवे सत्रासाहे नम इन्द्राय वोचत ॥२॥

हे याजकहरू हो ! सर्वव्यापक, प्रलयङ्कारी, ऐश्वर्यलाई यथोचित रूपमा विभाजन गर्ने, अजेय शत्रुका आक्रमण प्रतिकार गर्ने, विश्वका निर्माता, बलियो क्रोध भएका, सिङ्गो संसार थाम्ने, अपार सामर्थ्य भएका, सङ्गठित रूपले युद्ध गर्ने इन्द्रदेवको सधैं प्रशंसा गीत गाओ।

सत्रासाहो जनभक्षो जनंसहश्च्यवनो युध्मो अनु जोषमुक्षितः।
वृतंचयः सहुरिर्विक्ष्वारित इन्द्रस्य वोचं प्र कृतानि वीर्या ॥३॥

हे याजकहरू हो ! मानिसको हितका लागि सङ्गठित रूपमा युद्ध गर्ने, बलशाली विजेता,

शत्रुनाशक योद्धा, प्रीतिपूर्वक सोमरस पान गर्ने, शत्रुहन्ता, प्रजापालक र तेजस्वी इन्द्रदेवले गरेका महान् पराक्रमको गुणगान गर।

**अनानुदो वृषभो दोधतो वधो गम्भीर ऋष्वो असमष्टकाव्यः।**
**रध्रचोदः श्नथनो वीळितस्पृथुरिन्द्रः सुयज्ञ उषसः स्वर्जनत् ॥४॥**

हे याजक हो ! महादानी, बलशाली, दुर्धर्ष शत्रुका घातक, गम्भीर ज्ञानसम्पन्न, असाधारण कार्यकुशल, उत्तम कर्मका प्रेरक, शत्रुको शक्ति क्षीण गराउने, परिपुष्ट अङ्ग भएका, श्रेष्ठ कर्म भएका, महान् इन्द्रदेवका सामर्थ्यले उषा र सूर्य प्रकट भए।

**यज्ञेन गातुमप्तुरो विविद्रिरे धियो हिन्वाना उशिजो मनीषिणः।**
**अभिस्वरा निषदा गा अवस्यव इन्द्रे हिन्वाना द्रविणान्याशत ॥५॥**

समयमा काम गर्ने ज्ञानीहरू समृद्धिको कामना गर्दछन्। उनीहरू असल यज्ञीय कर्ममा स्तुति गर्दै योग्य मार्ग फेला पार्दछन् र संरक्षणको कामना गर्दछन्। उनीहरू इन्द्रदेवका नजिकै रहेर स्तुति गर्दै धन प्राप्त गर्दछन्।

**इन्द्र श्रेष्ठानि द्रविणानि धेहि चित्तिं दक्षस्य सुभगत्वमस्मे।**
**पोषं रयीणामरिष्टिं तनूनां स्वाद्मानं वाचः सुदिनत्वमह्नाम् ॥६॥**

हे इन्द्रदेव ! हामीलाई राम्रो धन, चेतनायुक्त सामर्थ्य र उत्तम ऐश्वर्य प्रदान गर। निरोगी बनाउँदै हाम्रो ऐश्वर्य वृद्धि गराऊ। दिनदिनै हाम्रो बोली मधुर र उत्तम गराऊ।

## [सूक्त - २२]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - इन्द्र। **छन्द** - अष्टि अतिशक्वरी।

**त्रिकद्रुकेषु महिषो यवाशिरं तुविशुष्मस्तृपत्सोममपिबद्विष्णुना सुतं यथा-वशत्। स ईं ममाद महि कर्म कर्तवे महामुरुं सैनं सश्चद्देवो देवं सत्यमिन्द्रं सत्य इन्दुः ॥१॥**

औंधि बलिया र पूजनीय इन्द्रदेवले तीनै लोकमा व्याप्त, सन्तुष्टिदायक, दिव्य सोमलाई जौंका पिठोसित मिसाएर विष्णुदेवसँगै मन लाग्दो पान गरे। त्यसले महान् इन्द्रदेवलाई असल कार्य गर्नका लागि प्रेरित गरायो। उत्तम गुणले सम्पन्न त्यस दिव्य सोमरसले इन्द्रदेव प्रसन्न भए।

**अध त्विषीमाँ अभ्योजसा क्रिविं युधाभवदा रोदसी अपृणदस्य मज्मना प्रवावृधे। अधत्तान्यं जठरे प्रेमरिच्यत सैनं सश्चद्देवो देवं सत्यमिन्द्रं सत्य इन्दुः ॥२॥**

हे इन्द्रदेव ! आफ्ना सामर्थ्यले क्रिवि नामका असुरलाई तिमीले जित्यौ र आकाश एवं पृथ्वीलाई तेजले परिपूर्ण गरायौ। तिमीले सोमको एक भाग आफ्ना पेटमा राख्यौ र अर्को भाग देवताहरूलाई दियौ। सत्यस्वरूप, दीप्तिमान् र दिव्य सोमले सत्यस्वरूप तेजस्वी इन्द्रदेवलाई पोषण प्रदान गर्दछ।

**साकं जातः क्रतुना साकमोजसा ववक्षिथ साकं वृद्धो वीर्यैः सासहिर्मृधो विचर्षणिः। दाता राधः स्तुवते काम्यं वसु सैनं सश्चद्देवो देवं सत्यमिन्द्रं सत्य इन्दुः ॥३॥**

हे इन्द्रदेव ! तिमी यज्ञसँगै प्रकट भएका हौ। आफ्ना सामर्थ्यले विश्वको भार उठाउन रहर गर्दछौ। हे ज्ञानी इन्द्रदेव ! महान् पराक्रमी, शत्रुसंहारक, विशिष्ट ज्ञानी भएर तिमी स्तोताले रुचाएको ऐश्वर्य प्रदान गर्दछौ। सत्यस्वरूप, दीप्तिमान् र दिव्य सोमरस सत्यका ज्ञाता इन्द्रदेवलाई प्राप्त हुन्छ।

**तव त्यन्नर्यं नृतोऽप इन्द्र प्रथमं पूर्व्यं दिवि प्रवाच्यं कृतम्। यद्देवस्य शवसा प्रारिणा असुं रिणन्नपः। भुवद्विश्वमभ्यादेवमोजसा विदादूर्जं शतक्रतु-र्विदादिषम् ॥४॥**

सबैलाई अनुशासनमा राख्ने हे इन्द्रदेव ! सम्पूर्ण मानवका हितकारी, सबैभन्दा पहिले गरिएका तिम्रा सबैभन्दा उत्कृष्ट कर्महरू स्वर्गलोकमा प्रशंसित छन्। आफ्ना शक्तिले तिमीले राक्षसको संहार गर्‍यौ, असुरलाई पराजित गर्‍यौ र जल प्रवाहित गरायौ। सयौं सत्कर्म गर्ने इन्द्रदेवले अन्न एवं बल प्राप्त गरे।

## [सूक्त - २३]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - बृहस्पति ब्रह्मणस्पति। **छन्द** - जगती त्रिष्टुप्

**गणानां त्वा गणपतिं हवामहे कविं कवीनामुपमश्रवस्तमम्।**
**ज्येष्ठराजं ब्रह्मणां ब्रह्मणस्पत आ नः शृण्वन्नूतिभिः सीद सादनम् ॥१॥**

हे ब्रह्मणस्पतिदेव ! तिमी गणका अधिपति हौ र कविहरूमा श्रेष्ठ छौ। अनुपम, श्रेष्ठ र तेजस्वी

मन्त्रका तिमी स्वामी हौ। त्यसैले हामी तिम्रो आह्वान गर्दछौं। हाम्रो प्रार्थना स्वीकार गरेर रक्षण साधनले हामीलाई संरक्षण प्रदान गर।

**देवाश्चित्ते असुर्य प्रचेतसो बृहस्पते यज्ञियं भागमानशुः।**
**उस्राइव सूर्यो ज्योतिषा महो विश्वेषामिज्जनिता ब्रह्मणामसि ॥२॥**

हे महाबली बृहस्पतिदेव ! देवताहरूले तिम्रो सर्वोत्कृष्ट यज्ञीय भाग प्राप्त गरे। महान् सूर्यदेवले तेजस्वी किरण उत्पन्न गरेझैं तिमी सम्पूर्ण ज्ञानका प्रकाशक हौ।

**आ विबाध्या परिरापस्तमांसि च ज्योतिष्मन्तं रथमृतस्य तिष्ठसि।**
**बृहस्पते भीमममित्रदम्भनं रक्षोहणं गोत्रभिदं स्वर्विदम् ॥३॥**

हे बृहस्पतिदेव ! पापकर्म गर्ने र अज्ञानरूपी अन्धकार तिमी विभिन्न उपायले नष्ट गर्दछौ। दुष्टलाई तर्साउने, शत्रु नाश गर्ने, राक्षस वध गर्ने, सुदृढ किल्ला ध्वस्त गराउने, यज्ञका प्रकाशक र सुखदायी रूपमा तिमी रथमा विराजमान हुन्छौ।

**सुनीतिभिर्नयसि त्रायसे जनं यस्तुभ्यं दाशान्न तमंहो अश्नवत्।**
**ब्रह्मद्विषस्तपनो मन्युमीरसि बृहस्पते महि तत्ते महित्वनम् ॥४॥**

हे बृहस्पतिदेव ! हविष्यान्न प्रदान गर्नेका तिमी असल पथप्रदर्शक हौ। तिमीले संरक्षण गरेकालाई पापले कहिल्यै छुँदैन। ज्ञानका शत्रुलाई सताउने तिमी अभिमानीका संहारक पनि हौ। तिम्रो विशाल महिमा अवर्णनीय छ।

**न तमंहो न दुरितं कुतश्चन नारातयस्तितिरुर्न द्वयाविनः।**
**विश्वा इदस्माद्ध्वरसो वि बाधसे यं सुगोपा रक्षसि ब्रह्मणस्पते ॥५॥**

हे ब्रह्मणस्पतिदेव तिमी जसलाई संरक्षण प्रदान गर्दछौ, त्यसलाई सबै हिंसक शक्तिबाट जोगाउँछौ। त्यसलाई पापकर्मले दुःख दिँदैन। शत्रुले उसलाई सताउँदैन र कुनै ठगले पनि उसलाई झुक्याउँदैन।

**त्वं नो गोपाः पथिकृद्विचक्षणस्तव व्रताय मतिभिर्जरामहे।**
**बृहस्पते यो नो अभि ह्वरो दधे स्वा तं मर्मर्तु दुच्छुना हरस्वती ॥६॥**

हे बृहस्पतिदेव ! तिमी हाम्रा संरक्षक र मार्गदर्शक हौ। हे सर्वज्ञाता ! नियमअनुसार तिमीलाई अनुगमन गर्दै हामी मन्त्रले स्तुति गर्दछौं। जसले हामीप्रति कुटिल व्यवहार गर्दछ, उसलाई उसैका दुर्बुद्धले विनाश गरोस्।

**उत वा यो नो मर्चयादनागसोऽरातीवा मर्तः सानुको वृकः।**
**बृहस्पते अप तं वर्तया पथः सुगं नो अस्यै देववीतये कृधि ॥७॥**

हे बृहस्पतिदेव ! शत्रुजस्तो वा ब्वाँसोजस्तो व्यवहार गर्ने मानिसले हामीलाई सताए भनेदेखि तिनलाई हाम्रा मार्गबाट हटाइदेऊ। देवत्व प्राप्त गर्ने हाम्रो मार्ग अपराधरहित र सुगम गराइदेऊ।

**त्रातारं त्वा तनूनां हवामहेऽवस्पर्तरधिवक्तारमस्मयुम्।**
**बृहस्पते देवनिदो नि बर्हय मा दुरेवा उत्तरं सुम्नमुन्नशन् ॥८॥**

हे ब्रह्मणस्पतिदेव ! तिमी शुत्रनाशक बलले विपद्बाट पार लगाउँछौ। तिमीलाई हामी आफ्ना ज्यानको संरक्षक ठान्दछौं, असले गृहपतिका रूपमा स्विकार्दछौं र तिम्रो आह्वान गर्दछौं। देवताको निन्दा गर्ने र दुष्ट आचरण भएकाले सुख नपाउँदै नाश होस्।

**त्वया वयं सुवृधा ब्रह्मणस्पते स्पार्हा वसु मनुष्या ददीमहि।**
**या नो दूरे तडितो या अरातयोऽभि सन्ति जम्भया ता अनप्नसः ॥९॥**

हे ब्रह्मणस्पतिदेव ! हामी याजकहरू तिमीबाट मनुष्यलाई हित गर्ने र चाहेजस्तो उत्तम उन्नति गराउने धनको माग गर्दछौं। हाम्रा नजिकै, टाढा वा वरिपरि शत्रुझैं दुःख दिने कर्महीन मानिस छन् भने उनीहरूलाई नाश गर।

**त्वया वयमुत्तमं धीमहे वयो बृहस्पते पप्रिणा सस्निना युजा।**
**मा नो दुःशंसो अभिदिप्सुरीशत प्र सुशंसा मतिभिस्तारिषीमहि ॥१०॥**

हे वाणीका स्वामी बृहस्पतिदेव ! तिमी असल चरित्र र ऐश्वर्यले पूर्ण गराउँछौ। तिमीसँगै रहेर हामी आयु प्राप्त गरौं। हाम्रा अधिपतिहरू दुराचारी र ठग नहोऊन्। असल बुद्धिका भरोसामा प्रशंसनीय रहेर हामी सङ्कटमुक्त हुन पाऔं।

अनानुदो वृषभो जग्मिराहवं निष्टप्ता शत्रुं पृतनासु सासहिः।
असि सत्य ऋणया ब्रह्मणस्पत उग्रस्य चिद्दमिता वीळुहर्षिणः ॥११॥

हे ब्रह्मणस्पतिदेव ! तिमीसरहको दानदाता अर्को कोही छैन। तिमी बलशाली, योद्धा, शत्रुपीडक, युद्धमा शत्रु पराजित गर्ने, ऋणमुक्त गराउने, पराक्रमले युक्त, शत्रु दमन गर्ने र न्यायशील छौ।

अदेवेन मनसा यो रिषण्यति शासामुग्रो मन्यमानो जिघांसति।
बृहस्पते मा प्रणक्तस्य नोवधो नि कर्म मन्युं दुरेवस्य शर्धतः ॥१२॥

हे बृहस्पतिदेव ! आसुरी वृत्तिले हामीलाई दुःख दिने, निर्दयी र अत्यन्त अहङ्कारी भएर स्तोताको हनन गर्न खोज्नेका हतियार हामीले नछोऔँ। कुमार्गगामी बलवान् व्यक्तिका क्रोधले हामीलाई नष्ट नगरोस्।

भरेषु हव्यो नमसोपसद्यो गन्ता वाजेषु सनिता धनंधनम्।
विश्वा इदर्यो अभिदिप्स्वोऽ मृधो बृहस्पतिर्वि ववर्हा रथाँइव ॥१३॥

युद्धमा सहायताका लागि आदरपूर्वक बोलाउन योग्य बृहस्पतिदेव सबै किसिमका ऐश्वर्य प्रदान गर्दछन्। उनी स्तुत्य छन्। शत्रुका सेनालाई नष्ट गर्ने रहर भएका बृहस्पतिदेव शत्रुको रथ र हिंस्रक पशुलाई उस्तै किसिमले संहार गर्दछन्।

तेजिष्ठया तपनी रक्षसस्तप ये त्वा निदे दधिरे दृष्टवीर्यम्।
आविस्तत्कृष्व यदसत्त उक्थ्यं बृहस्पते वि परिरापो अर्दय ॥१४॥

हे बृहस्पतिदेव ! तिमीले देखेका पराक्रमको जसले निन्दा गर्दछन्, त्यस्तो दुष्ट स्वभाव भएकालाई आफ्नै तेजस्वी तापले पीडित गराऊ। तिम्रो पराक्रम प्रशंसनीय छ। त्यसलाई प्रकट गरेर चारैतिर व्याप्त शत्रुको संहार गर।

बृहस्पते अति यदर्यो अर्हाद्द्युमद्विभाति क्रतुमज्जनेषु।
यद्दीदयच्छवस ऋतप्रजात तदस्मासु द्रविणं धेहि चित्रम् ॥१५॥

हे धर्ममा नाम कमाएका बृहस्पतिदेव ! ज्ञानी मानिसबाट सम्मानित, मानिसहरूमध्ये तेजस्वी कर्मको फलका रूपमा देखा पर्ने, देदीप्यमान सर्वोत्तम तथा अलौकिक ऐश्वर्य हामीलाई प्रदान गर।

मा नः स्तेनेभ्यो ये अभि द्रुहस्पदे निरामिणो रिपवोऽन्नेषु जागृधुः।
आ देवानामोहते वि व्रयो हृदि बृहस्पते न परः साम्नो विदुः ॥१६॥

हे बृहस्पतिदेव ! दुष्ट शत्रु आक्रमण गरेर अन्न आदि पदार्थ कमाउन चाहन्छ। देवताप्रति द्वेष गर्ने र सुखदायी असल कुरो बोल्न नजान्नेबाट हामी नडराऔँ।

विश्वेभ्यो हि त्वा भुवनेभ्यस्परि त्वष्टाजनत्साम्नःसाम्नः कविः।
स ऋणचिदृणया ब्रह्मणस्पतिर्द्रुहो हन्ता मह ऋतस्य धर्तरि ॥१७॥

हे ब्रह्मणस्पतिदेव ! तिमीलाई प्रजापतिले भुवनभरिमा सबैभन्दा राम्रो बनाएका छन्। तिमी प्रत्येक सामगानका ज्ञाता हौ। महान् यज्ञ धारण गर्ने स्तोतालाई ऋणबाट मुक्त गराएर विद्रोहीको विनाश गर्दछौ।

तव श्रिये व्यजिहीत पर्वतो गवां गोत्रमुदसृजो यदङ्गिरः।
इन्द्रेण युजा तमसा परीवृतं बृहस्पते निरपामौब्जो अर्णवम् ॥१८॥

हे अङ्गिरा वंशी बृहस्पतिदेव ! पर्वतमा लुकाइएका अवस्थामा तिमीले गाईलाई बाहिर निकालेर आश्रय दिएका थियौ। त्यस बेला इन्द्रदेवका सहायताले वृत्रद्वारा रोकिएका जललाई वर्सनका लागि तिमीले प्रेरित गऱ्यौ।

ब्रह्मणस्पते त्वमस्य यन्ता सूक्तस्य बोधि तनयं च जिन्व।
विश्वं तद्भद्रं यदवन्ति देवा बृहद्वदेम विदथे सुवीराः ॥१९॥

हे ब्रह्मणस्पतिदेव ! तिमी सम्पूर्ण संसारका नियन्ता हौ। तिमी यस सूक्तका ज्ञाता हौ। देवगणको संरक्षण जसलाई प्राप्त हुन्छ, उनीहरूको सबै किसिमले कल्याण हुन्छ। तिमी हाम्रा सन्ततिलाई परिपुष्ट बनाऊ। त्यसले गर्दा हामी यज्ञमा असल सन्तानका साथ तिम्रो महिमाको गुणगान गर्न सकौँ।

[सूक्त – २४]

ऋषि – गृत्समद भार्गव शौनक। देवता – ब्रह्मणस्पति बृहस्पति। छन्द – जगती त्रिष्टुप्

**सेमामविड्ढि प्रभृतिं य ईशिषेऽया विधेम नवया महा गिरा।**
**यथा नो मीढ्वान्त्स्तवते सखा तव बृहस्पते सीषधः सोत नो मतिम्॥१॥**

हे बृहस्पतिदेव ! तिमी सम्पूर्ण विश्वका स्वामी हौ, महान् स्तुतिद्वारा हामी तिम्रो यश गाउँछौं, ग्रहण गर। मित्रभावले तिम्रो स्तुति गर्ने हामी स्तोतालाई सद्बुद्धि प्रदान गर।

**यो नन्त्वान्यनमन्न्योजसोतादर्दर्मन्युना शम्बराणि वि।**
**प्राच्यावयदच्युता ब्रह्मणस्पतिरा चाविशद्वसुमन्तं वि पर्वतम्॥२॥**

ब्रह्मणस्पतिदेवले दण्ड दिन योग्य शत्रु आफ्ना सामर्थ्यले दबाए र रिसले शम्बरलाई थिलथिलो पारे, नखस्ने जललाई तल खसाले र गाई लुकाउने पर्वतभित्र उनी पसे।

**तद्देवानां देवतमाय कर्त्वमश्रथ्नन्दृळ्हाव्रदन्त वीळिता।**
**उद्गा आजदभिनद्ब्रह्मणा वलमगूहत्तमो व्यचक्षयत्स्वः॥३॥**

देवताहरूमा सर्वश्रेष्ठ ब्रह्मणस्पतिदेवका पौरखले बलिया किल्लाहरू पनि खुकुलिन्छन् र बलशाली पनि सोझा भएर नुहुन्छन्। ब्रह्मणस्पतिदेवले मन्त्रशक्तिद्वारा बलासुरलाई मारेर गाई मुक्त गराए। सूर्य प्रकट गराएर उनले अन्धकार नष्ट गराए।

**अश्मास्यमवतं ब्रह्मणस्पतिर्मधुधारमभि यमोजसातृणत्।**
**तमेव विश्वे पपिरे स्वर्दृशो बहु साकं सिसिचुरुत्समुद्रिणम्॥४॥**

ढुङ्गोजस्तो बलियो मुख र मधुर धारा भएका मेघलाई बल प्रायोगद्वारा ब्रह्मणस्पतिदेवले बर्सिनका लागि प्रेरित गरे। वर्षाको जल सूर्यका रश्मिले पान गरेर प्रचुर जलधाराका रूपमा फेरि बर्साए।

**सना ता का चिद्भुवना भवीत्वा माद्भिः शरद्भिर्दुरो वरन्त वः।**
**अयतन्ता चरतो अन्यदन्यदिद्या चकार वयुना ब्रह्मणस्पतिः॥५॥**

हे ऋत्विक्हरू हो ! ब्रह्मणस्पतिदेवले तिमीहरूका लागि अनादि कालदेखि प्रत्येक महिना र प्रत्येक वर्ष वर्षा गराउने मेघलाई प्रेरित गरे। यसै विधिले द्यावा र पृथिवी दुवै परस्परमा जल उपभोग गर्दछन्।

**अभिनक्षन्तो अभि ये तमानशुर्निधिं पणीनां परमं गुहा हितम्।**
**ते विद्वांसः प्रतिचक्ष्यानृता पुनर्यत उ आयन्तदुदीयुराविशम्॥६॥**

पणीहरूले गुफामा लुकाएर राखेको मूल्यवान् धन अनेकतिर खोजेर देवताहरूले फेला पारे। त्यही धन देखेर यज्ञमा बाधा हाल्ने राक्षस जताबाट आए त्यतै फर्केर गए।

**ऋतावानः प्रतिचक्ष्यानृता पुनरात आ तस्थुः कवयो महस्पथः।**
**ते बाहुभ्यां धमितमग्निमश्मनि नकिः षो अस्त्यरणो जहुर्हि तम्॥७॥**

सर्वज्ञाता र सत्यवादीले मायाको शक्ति थाहा पाए। मायाबाट जोगिंदै विवेकपूर्वक महान् कार्यमा उनीहरू लागे। यज्ञका निम्ति उत्पन्न गरिएको अग्नि त्यहीं छोडिदिए।

**ऋतज्येन क्षिप्रेण ब्रह्मणस्पतिर्यत्र वष्टि प्र तदश्नोति धन्वना।**
**तस्य साध्वीरिषवो याभिरस्यति नृचक्षसो दृशये कर्णयोनयः॥८॥**

ब्रह्मणस्पतिदेवसित प्रत्यञ्चा तान्न सजिलो एउटा राम्रो धनुष छ। चाहेका ठाउँमा उनी बाण पुऱ्याउन सक्छन्। त्यसैबाट उनले मानिसको दुष्ट भाव र सङ्कट मेटाउँछन्।

**स संनयः स विनयः पुरोहितः स सुष्टुतः स युधि ब्रह्मणस्पतिः।**
**चाक्ष्मो यद्वाजं भरते मती धनादित्सूर्यस्तपति तप्यतुर्वृथा॥९॥**

स्तुत्य ब्रह्मणस्पतिदेव युद्धमा अगुवा भएर सङ्गठित रूपले आक्रमण गर्दछन्। सर्वदर्शी ब्रह्मणस्पतिदेव अन्न र धन धारण गर्दछन्। अनि स्वाभाविक रूपले सूर्य उदाउँछन्।

**विभु प्रभु प्रथमं मेहनावतो बृहस्पतेः सुविदत्राणि राध्या।**
**इमा सातानि वेन्यस्य वाजिनो येन जना उभये भुञ्जते विशः॥१०॥**

अनन्त सामर्थ्य प्रदान गर्ने, सबै किसिमले सुखद सिद्धि प्रदान गर्ने यो धन सबैले रहर गर्दा महाबली बृहस्पतिले बर्साएका हुन्। दुवै किसिमका प्रजाले यो भोग गर्दछन्।

**योऽवरे वृजने विश्वथा विभुर्महामु रण्वः शवसा ववक्षिथ।**
**स देवो देवान्प्रति पप्रथे पृथु विश्वेदु ता परिभूर्ब्रह्मणस्पतिः ॥११॥**

सर्वव्यापी, आनन्ददायी ब्रह्मणस्पतिदेव प्रत्येक युद्धमा आफ्ना सामर्थ्यले आफ्नो महत्ता प्रकट गर्दछन्। सबै देवताहरूमा श्रेष्ठ ब्रह्मणस्पतिदेव विश्वमा व्यापक रहन्छन्।

**विश्वं सत्यं मघवाना युवोरिदापश्चन प्र मिनन्ति व्रतं वाम्।**
**अच्छेन्द्राब्रह्मणस्पती हविर्नोऽन्नं युजेव वाजिना जिगातम् ॥१२॥**

हे ऐश्वर्यसम्पन्न इन्द्रदेव र ब्रह्मणस्पतिदेव ! तिमीहरू दुवै सत्य व्रतधारी हौ। तिमीहरू दुवैका कर्तव्य र नियम अटल छन्। जुवामा नारिएका अश्वजस्तै तिमीहरू दुवै हाम्रो हविष्यान्न ग्रहण गर्नका लागि आओ।

**उताशिष्ठा अनु शृण्वन्ति वह्नयः सभेयो विप्रो भरते मती धना।**
**वीडुद्वेषा अनु वश ऋणमाददिः स ह वाजी समिथे ब्रह्मणस्पतिः ॥१३॥**

युद्धका निम्ति बलिष्ठ ब्रह्मणस्पतिदेव सभ्य र ज्ञानीको उत्तम धन स्वीकार गर्दछन् र बलशाली शत्रुसित द्रोह गर्दछन्। अश्वझैं तीव्र गतिमा दौड्नेले उनको कुरो सुन्दछन् र ऋणमुक्त हुन्छन्।

**ब्रह्मणस्पतेर भवद्यथावशं सत्यो मन्युर्महि कर्मा करिष्यतः।**
**यो गा उदाजत्स दिवे वि चाभजन्महीव रीतिः शवसासरत्पृथक् ॥१४॥**

ठूलो काममा लागिरहने ब्रह्मणस्पतिदेवका कार्यले अभिलाषाअनुसार फल दिन्छ। ब्रह्मणस्पतिदेवले गाई बाहिर निकालेर विजय प्राप्त गरे। निरन्तर प्रवाहमान नदीझैं गाई स्वतन्त्र भएर हिंडे।

**ब्रह्मणस्पते सुयमस्य विश्वहा रायः स्याम रथ्योः वयस्वतः।**
**वीरेषु वीराँ उप पृङ्धि नस्त्वं यदीशानो ब्रह्मणा वेषि मे हवम् ॥१५॥**

हे ब्रह्मणस्पतिदेव ! हामी सधैं व्रतका पालक हौं र अन्नयुक्त धनका अधिपति रहौं। तिमी सबैका नेता हौ। हामीले ज्ञानपूर्वक गरेको स्तुति स्वीकार गरेर हामीलाई पराक्रमी सन्तति प्रदान गर।

**ब्रह्मणस्पते त्वमस्य यन्ता सूक्तस्य बोधि तनयं च जिन्व।**
**विश्वं तद्भद्रं यदवन्ति देवा बृहद्वदेम विदथे सुवीराः ॥१६॥**

हे संसार हाँक्ने ब्रह्मणस्पतिदेव ! तिमी यस सूक्तका ज्ञाता हौ। देवगणको संरक्षण जसलाई प्राप्त हुन्छ, उनीहरूको सबै किसिमले कल्याण हुन्छ। तिमी हाम्रा सन्ततिलाई परिपुष्ट बनाऊ। असल सन्तानसँगै हामी यज्ञमा तिम्रो महिमा गाउँन गर्न सकौं।

## [सूक्त - २५]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - ब्रह्मणस्पती। **छन्द** - जगती।

**इन्धानो अग्निं वनवद्वनुष्यतः कृतब्रह्मा शूशुवद्रातहव्य इत्।**
**जातेन जातमति स प्र सर्सृते यंयं युजं कृणुते ब्रह्मणस्पतिः ॥१॥**

ब्रह्मणस्पतिदेवले जसलाई सखा बनाउँछन्, तिनका शत्रु अग्निमा डढेर संहार हुन्छन्। उनका ज्ञानवान् सखा हवि प्रदान गर्दै समृद्धिशाली र छोरानातिले सम्पन्न हुन्छन्।

**वीरेभिर्वीरान्वनवद्वनुष्यतो गोभी रयिं पप्रथद्बोधति त्मना।**
**तोकं च तस्य तनयं च वर्धते यंयं युजं कृणुते ब्रह्मणस्पतिः ॥२॥**

यजमानलाई ब्रह्मणस्पतिदेवले आफ्नो सखाका रूपमा स्वीकार गर्दछन्। यजमानका बलशाली पुत्रले हिंसक शत्रुका वीर पुत्र मारिदिन्छन्। तिनीहरू गाईरूपी धनले समृद्ध र ज्ञानवान् बन्दछन्। ब्रह्मणस्पतिदेव उनलाई छोरानातिले समृद्ध बनाउँछन्।

**सिन्धुर्न क्षोदः शिमीवाँ ऋघायतो वृषेव वध्रीँ रभि वष्ट्योजसा।**
**अग्नेरिव प्रसितिर्नाह वर्तवे यंयं युजं कृणुते ब्रह्मणस्पतिः ॥३॥**

जुन यजमानलाई ब्रह्मणस्पतिदेवले आफ्नो सखाका रूपमा स्वीकार गर्दछन्, नदीले किनारा भत्काएझैं, साँढेले बाछा मिचेझैं उनले हिंसक शत्रु पराजित गर्दछन्। यस्ता यजमान अग्निका ज्वालाजस्तै कसैबाट पनि नरोकिने खालका हुन्छन्।

तस्मा अर्षन्ति दिव्या असश्चतः स सत्वभिः प्रथमो गोषु गच्छति।
अनिभृष्टतविषिर्हन्त्योजसा यंयं युजं कृणुते ब्रह्मणस्पतिः ॥४॥

जुन यजमानलाई ब्रह्मणस्पतिदेवले आफ्नो सखाका रूपमा स्वीकार गर्दछन्, उनलाई दैवी सामर्थ्य निरन्तर प्राप्त भइरहन्छ। त्यस्ता सत्यनिष्ठ व्यक्तिलाई सबैभन्दा पहिले गाईरूपी धन प्राप्त हुन्छ। युद्धमा शत्रु संहार गर्दै सधैं ऊ अजेय रहन्छ।

तस्मा इद्विश्वे धुनयन्त सिन्धवोऽच्छिद्रा शर्म दधिरे पुरूणि।
देवानां सुम्ने सुभगः स एधते यंयं युजं कृणुते ब्रह्मणस्पतिः ॥५॥

जुन यजमानलाई ब्रह्मणस्पतिदेवले आफ्नो सखाका रूपमा स्वीकार गर्दछन्, नदीको प्रवाह उनकै अनुकूल बग्छ। उनले निरन्तर अनेकौं किसिमका सुखको भोग गर्दछन्। त्यस्ता सौभाग्यशाली यजमानले देवताबाट दिइएको सुख र समृद्धि प्राप्त गर्दछन्।

[सूक्त - २६]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - ब्रह्मणस्पती। **छन्द** - जगती।

ऋजुरिच्छंसो वनवद्वनुष्यतो देवयन्निददेवयन्तमभ्यसत्।
सुप्रावीरिद्वनवत्पृत्सु दुष्टरं यज्वेदयज्योर्वि भजाति भोजनम् ॥१॥

ब्रह्मणस्पतिदेवको स्तुति गर्ने सज्जन स्तोताले देवगणको पूजन गर्दछन् र देवगणलाई नमान्ने र हिंसकलाई संहार गर्दछन्। उत्तम संरक्षण प्रदान गर्ने ब्रह्मणस्पतिदेव युद्धमा डर लाग्दा शत्रुलाई मार्दछन्। यज्ञ नगर्नेहरूका ऐश्वर्य याज्ञिकले भोग गर्दछन्।

यजस्व वीर प्र विहि मनायतो भद्रं मनः कृणुष्व वृत्रतूर्ये।
हविष्कृणुष्व सुभगो यथाससि ब्रह्मणस्पतेरव आ वृणीमहे ॥२॥

हे मनुष्य हो ! यज्ञद्वारा अहङ्कारी शत्रु विनाश गर। विघ्न नष्ट गराउने मङ्गलमय विचार बनाओ। ब्रह्मणस्पतिदेवका संरक्षणको कामना गर्दै हविष्यान्न तयार गर र त्यसरी नै सौभाग्यशाली बन।

स इज्जनेन स विशा स जन्मना स पुत्रैर्वाजं भरते धना नृभिः।
देवानां यः पितरमाविवासति श्रद्धामना हविषा ब्रह्मणस्पतिम् ॥३॥

श्रद्धायुक्त भावनाले देवताहरूको पालन गर्ने ब्रह्मणस्पतिदेवलाई हव्य समर्पित गर्ने याजकले समाज र सन्ततिबाट ऐश्वर्य प्राप्त गर्दछ र सबै मानिसबाट सहयोग पाउँछ।

यो अस्मै हव्यैर्घृतवद्भिरविधत्प्र तं प्राचा नयति ब्रह्मणस्पतिः।
उरुष्यतीमंहसो रक्षती रिषोंऽहोश्चिदस्मा उरुचक्रिरद्भुतः ॥४॥

यज्ञमा ब्रह्मणस्पतिदेवले दिएका घिउसहित हव्यको आहुति चढाउने यजमानले उत्तम संरक्षण प्राप्त गर्दछन्। त्यस्ता यजमान पापबाट जोगिन्छन्, तिनको दुःखकष्ट मेटिन्छ र देवत्वका मार्गमा अघि बढ्दै अचम्म किसिमले महान् हुन्छन्।

[सूक्त - २७]

**ऋषि** - कूर्म गार्त्समद। **देवता** - आदित्यगण। **छन्द** - त्रिष्टुप्।

इमा गिर आदित्येभ्यो घृतस्नूः सनाद्राजभ्यो जुह्वा जुहोमि।
शृणोतु मित्रो अर्यमा भगो नस्तुविजातो वरुणो दक्षो अंशः ॥१॥

तेजस्वी आदित्यगणलाई जुहू पात्रका घिउले सेचन गर्दै हामी स्तुति गर्दछौं। मित्र, अर्यमा, भग, सर्वव्यापी वरुणदेव, दक्ष र अंश आदि देवगणले हाम्रो स्तुति ग्रहण गरुन्।

इमं स्तोमं सक्रतवो मे अद्य मित्रो अर्यमा वरुणो जुषन्त।
आदित्यासः शुचयो धारपूता अवृजिना अनवद्या अरिष्टाः ॥२॥

कुटिलतारहित, अनिन्दित आचरण भएका, हिंसा वृत्ति नभएका र हिंसित नहुने यशस्वी आदित्यगण, मित्र, वरुण र अर्यमा देवगणले हाम्रो स्नेहयुक्त स्तोत्र आज सुनून्।

त आदित्यास उरवो गभीरा अदब्धासो दिप्सन्तो भूर्यक्षाः।
अन्तः पश्यन्ति वृजिनोत साधु सर्वं राजभ्यः परमा चिदन्ति ॥३॥

महान् गम्भीर, दमन गर्नमा समर्थ, दुष्टलाई दण्ड दिने, हजार आँखा हुने आदित्यदेव समस्त प्राणीका अन्तःकरणको सोझो वा कुटिल भाव देख्दछन्। यिनका लागि टाढा रहेको कुरो पनि नजिकैको हुन्छ।

धारयन्त आदित्यासो जगत्स्था देवा विश्वस्य भुवनस्य गोपाः।
दीर्घाधियो रक्षमाणा असुर्यमृतानश्चयमाना ऋणानि ॥४॥

स्थावरजङ्गम आदि सबैलाई धारण गर्दै यी आदित्यगण सम्पूर्ण संसारलाई रक्षा गर्छन्। विशाल बुद्धि भएका यी देवगण सत्य मार्गमा चल्ने स्तोताको ऋण मेटाइदिन्छन् र अन्न जलको व्यवस्था गर्दै धनको रक्षा गर्दछन्।

विद्यामादित्या अवसो वो अस्य यदर्यमन्भय आ चिन्मयोभु।
युष्माकं मित्रावरुणा प्रणीतौ परि श्वभ्रेव दुरितानि वृज्याम् ॥५॥

हे आदित्यगण ! कुनै सङ्कट आइलागेमा हामीलाई तिम्रो सुखदायी संरक्षण प्राप्त होस्। हे अर्यमा, मित्र र वरुणदेवहरू हो ! ढाँड र रुखो जमिनजस्तो पाप त्यागिदिऊँ।

सुगो हि वो अर्यमन्मित्र पन्था अनृक्षरो वरुण साधुरस्ति।
तेनादित्या अधि वोचता नो यच्छता नो दुष्परिहन्तु शर्म ॥६॥

हे अर्यमादेव, मित्रदेव र वरुणदेव हो ! हामीलाई विघ्नरहित, सरल र सुगमतापूर्वक हिँड्ने बाटो देखाओ। हे आदित्यगण ! हामीलाई सन्मार्गमा चल्नका लागि प्रेरणा दिँदै कहिल्यै नष्ट नहुने सुख प्रदान गर।

पिपर्तु नो अदिती राजपुत्राति द्वेषांस्यर्यमा सुगेभिः।
बृहन्मित्रस्य वरुणस्य शर्मोप स्याम पुरुवीरा अरिष्टाः ॥७॥

हे तेजस्वी सन्तान हुने अदिति र अर्यमादेव ! रिस गर्ने शत्रुबाट जोगिएर हिँड्न सजिलो बाटो हामीलाई देखाइदेओ। हामी मित्रदेव र वरुणदेवका संरक्षणमा शत्रुबाट पीडित नभईकन असल सन्तानसहितको महान् सुख प्राप्त गरौं।

तिस्रो भूमीर्धारयन् त्रीरुत द्यून्त्रीणि व्रता विदथे अन्तरेषाम्।
ऋतेनादित्या महि वो महित्वं तदर्यमन्वरुण मित्र चारु ॥८॥

यज्ञीय व्रतका पालक आदित्यगणले तीन भूमिलाई तीन प्रकाशसहित धारण गरे। हे आदित्यगण ! तिमीहरूको महान् सामर्थ्य यज्ञमा आधारित छ। हे मित्र, वरुण र अर्यमादेव हो ! तिमीहरूको महानता सर्वश्रेष्ठ छ।

त्री रोचना दिव्या धारयन्त हिरण्ययाः शुचयो धारपूताः।
अस्वप्नजो अनिमिषा अदब्धा उरुशंसा ऋजवे मर्त्याय ॥९॥

सुनका गहनाले सजिएका, तेजसम्पन्न, परम पवित्र, निद्रारहित, आँखा नझिम्क्याउने, यशस्वी, हिंसारहित र मानिसका लागि हितकारी आदित्यगणले धर्मका मार्गमा चल्ने मानिसका लागि तीन वटा दिव्य शक्ति धारण गरेका छन्।

त्वं विश्वेषां वरुणासि राजा ये च देवा असुर ये च मर्ताः।
शतं नो रास्व शरदो विचक्षेऽश्यामायूंषि सुधितानि पूर्वा ॥१०॥

हे मादक पदार्थरहित वरुणदेव ! तिमी देवता तथा मनुष्य सबैका लागि राजा हौ। यो संसार राम्ररी हेर्नका लागि हामीलाई सय वर्षको आयु देऊ।

न दक्षिणा वि चिकिते न सव्या न प्राचीनमादित्या नोत पश्चा।
पाक्या चिद्वसवो धीर्या चिद्युष्मानीतो अभयं ज्योतिरश्याम् ॥११॥

हे आदित्यगण ! अगाडिपछाडि, दायाँबायाँ के छ भन्ने कुरो हामी जान्दैनौं। सबैका आश्रयदाता हे आदित्यगण ! पाको बुद्धिका र धैर्यवान् तिमीले देखाएका बाटोमा हामी हिँड्दै भयरहित ज्योति प्राप्त गर्न सकौं।

यो राजभ्य ऋतनिभ्यो ददाश यं वर्धयन्ति पुष्टयश्च नित्याः।
स रेवान्याति प्रथमो रथेन वसुदावा विदथेषु प्रशस्तः ॥१२॥

जसले तेजस्वी याजकलाई धन प्रदान गर्दछन्, जसले सधैंभरि समृद्धिशाली रूपमा उन्नति गर्दछन्, उनीहरू नै स्तुत्य, धनप्रदाता र रथमा प्रतिष्ठित रथीजस्ता भएर सधैं अगुवा हुन्छन्।

शुचिरपः सूयवसा अदब्ध उप क्षेति वृद्धवयाः सुवीरः।
नकिष्टं घ्नन्त्यन्तितो न दूराद्य आदित्यानां भवति प्रणीतौ ॥१३॥

जसले आदित्यगणको बाटो अनुसरण गर्दछन् तिनैले दीप्तिमान्, हिंसारहित, उत्तम सन्तानयुक्त,

दीर्घायु भएर पोषक अन्न तथा असल कर्म प्राप्त गर्दछन्। उनलाई नजिकै वा टाढाबाट कुनै शत्रुले वध गर्न सक्दैन।

**अदिते मित्र वरुणोत मृड यद्वो वयं चकृमा कच्चिदागः।**
**उर्वश्यामभयं ज्योतिरिन्द्र मा नो दीर्घा अभि नशन्तमिस्राः ॥१४॥**

हे अदिति, मित्र र वरुणदेव हो ! हामीबाट कुनै अपराध भइहालेछ भने पनि हामीलाई क्षमा गर। हे ऐश्वर्यवान् इन्द्रदेव ! हामीलाई लामो समयसम्म अन्धकारले नछोपोस् भनेर विशाल र अभय ज्योति प्रदान गर।

**उभे अस्मै पीपयतः समीची दिवो वृष्टिं सुभगो नाम पुष्यन्।**
**उभा क्षयावाजयन्याति पृत्सूभावर्धौ भवतः साधू अस्मै ॥१५॥**

आदित्यगणको अनुसरण गर्ने व्यक्तिलाई द्युलोक र पृथिवीलोक दुवैले परिपुष्ट गर्दछन्। द्युलोकबाट ऐश्वर्यको वर्षा भएर उसले सौभाग्य प्राप्त गर्दछ। ऊ युद्धमा शत्रुमाथि विजय प्राप्त गर्दै दुवै लोकमा जान्छ र दुवै लोक उसका लागि मङ्गलदायी हुन्छन्।

**या वो माया अभिद्रुहे यजत्राः पाशा आदित्या रिपवे विचृत्ताः।**
**अश्वीव ताँ अति येषं रथेनारिष्टा उरावा शर्मन्त्स्याम ॥१६॥**

हे आदित्यगण ! कठिन बाटो घोडाद्वारा सजिलै कटिएझैँ तिमीले शत्रुका लागि बनाएका पाश हामी सजिलैसँग काट्न सकौँ। हामी सुखमय विशाल घरमा निर्विघ्न भएर निवास गरौँ।

**माहं मघोनो वरुण प्रियस्य भूरिदाव्न आ विदं शूनमापेः।**
**मा रायो राजन्त्सुयमादव स्थां बृहद्वदेम विदथे सुवीराः ॥१७॥**

हे वरुणदेव ! सबैलाई सन्तुष्ट गराउने ऐश्वर्यवान् दानदाताको सुखसमृद्धिमा हामी कहिल्यै ईर्ष्या नगरौँ, उसलाई आफन्त मानौँ। हे वरुणदेव ! अभावमा धन पाएपछि हामी अहङ्कारी नबनौँ, असल सन्तानसहित यज्ञमा देवताको स्तुति गरौँ।

[सूक्त - २८]

ऋषि - कूर्म गार्त्समद। देवता - वरुण। छन्द - त्रिष्टुप्।

**इदं कवेरादित्यस्य स्वराजो विश्वानि सान्त्यभ्यस्तु मह्ना।**
**अति यो मन्द्रो यजथाय देवः सुकीर्तिं भिक्षे वरुणस्य भूरेः ॥१॥**

स्वयं प्रकाशित हुने आदित्यगणले आफ्नै सामर्थ्यबाट सबै विनाशकारी शक्तिलाई हटाऊन् भन्ने स्तोत्र उनै दूरदर्शी आदित्यगणका लागि हुन्। याज्ञिकहरूका लागि अत्यन्त सुखद र पोषणकारी स्तुतिबाट हामी वरुणदेवलाई प्रार्थना गर्दछौँ।

**तव व्रते सुभगासः स्याम स्वाध्यो वरुण तुष्टुवांसः।**
**उपायन उषसां गोमतीनामग्नयो न जरमाणा अनु द्यून् ॥२॥**

हे वरुणदेव ! तिम्रा पछि लागेर हामी सौभाग्यशाली बनौँ। किरणयुक्त उषाकालमा प्रत्येक दिन तिम्रो स्तुति गर्दै हामी स्तोताहरू असल बुद्धियुक्त भएर अग्निसमान तेजस्वी बनौँ।

**तव स्याम पुरुवीरस्य शर्मन्नुरुशंसस्य वरुण प्रणेतः।**
**यूयं नः पुत्रा अदितेरदब्धा अभि क्षमध्वं युज्याय देवाः ॥३॥**

हे असल नायक वरुणदेव ! तिमी धेरैबाट प्रशंसित छौ। हामी वीर सन्ततिले युक्त भएर तिम्रा आश्रयमा रहौँ। हे अवध्य पुत्रहरू हो ! हामी तिमीहरूसित मित्रभावको कामना गर्दै आफ्ना अपराध तथा पापहरूका लागि क्षमा याचना गर्दछौँ।

**प्र सीमादित्यो असृजद्विधर्ता ऋतं सिन्धवो वरुणस्य यन्ति।**
**न श्राम्यन्ति न वि मुचन्त्येते वयो न पप्तू रघुया परिज्मन् ॥४॥**

समस्त विश्व धारण गर्ने अदितिपुत्र वरुणदेवले वर्षाका रूपमा जल उत्पन्न गरेर आफ्ना सामर्थ्यले नदी प्रवाहित गराए। त्यो नदी आज पनि निरन्तर उड्ने चरोझैँ अविराम गतिले आज पनि पृथ्वीमा विचरण गरिरहेको छ।

**वि मच्छ्रथाय रशनामिवाग ऋध्याम ते वरुण खामृतस्य।**
**मा तन्तुश्छेदि वयतो धियं मे मा मात्रा शार्यपसः पुर ऋतोः ॥५॥**

हे वरुणदेव ! पापले हामीलाई डोरीले झैँ अल्झाइराखेको छ, त्यसबाट छुटाइदेऊ। त्यसबाट

असल मार्गमा यात्रा गर्ने तिम्रो सामर्थ्य हामी धारण गर्न सकौँ। बुनाइको धागो नचुँडिएझैँ असल कार्यमा संलग्न रहेका बखत तिम्रो गति निरन्तर प्राप्त भइरहोस्। कार्य समाप्तिभन्दा पहिले हाम्रो शक्ति क्षीण नहोस्।

अपो सु म्यक्ष वरुण भियसं मत्सम्राड्टतावोऽनु मा गृभाय।
दामेव वत्साद्वि मुमुग्ध्यंहो नहि त्वदारे निमिषश्चनेशे ॥६॥

सत्यका रक्षक, हे तेजस्वी वरुणदेव ! हामीमाथिको कृपा यथावत् राखै भयबाट मुक्त गर। डोरीबाट बाछो फुक्का गराएझैँ पापबाट हामीलाई मुक्त गराऊ। तिम्रो अभावमा हाम्रो कुनै अस्तित्व छैन।

मा नो वधैर्वरुण ये त इष्टावेनः कृण्वन्तमसुर भ्रीणन्ति।
मा ज्योतिषः प्रवसथानि गन्म वि षू मृधः शिश्रथो जीवसे नः ॥७॥

हे प्राणीका रक्षक वरुणदेव ! दुष्टलाई नष्ट गर्ने आयुधको हामीमाथि प्रभाव नपरोस्। हाम्रो जीवन सुखमय बनाउन हिंसक शत्रु नष्ट गर तर हामीबाट प्रकाश टाढा नहोस्।

नमः पुरा ते वरुणोत नूनमुतापरं तुविजात ब्रवाम।
त्वे हि कं पर्वते न श्रितान्यप्रच्युतानि दूळभ व्रतानि ॥८॥

हे असङ्ख्य दुर्लभ शक्तिले सम्पन्न वरुणदेव ! तिम्रो अटुट नियम पर्वतजस्तै अचल र दृढतापूर्वक स्थिर रहन्छ। हामीले विगतमा तिमीलाई ढोग्यौँ, यस बेला पनि ढोग्छौँ र भविष्यमा पनि ढोग्नेछौँ।

पर ऋणा सावीरध मत्कृतानि माहं राजन्नन्यकृतेन भोजम्।
अव्युष्टा इन्नु भूयसीरुषास आ नो जीवान्वरुण तासु शाधि ॥९॥

हे वरुणदेव ! हामीलाई ऋणमुक्त गराऊ। अर्काले कमाएको सम्पत्ति हामी नचलाऔँ। जीवनमा धेरै पटक प्रकाशमयी उषा उदाउला त्यसैबाट हाम्रो जीवन सुखमय बनाऊ।

यो मे राजन्युज्यो वा सखा वा स्वप्ने भयं भीरवे मह्यमाह।
स्तेनो वा यो दिप्सति नो वृको वा त्वं तस्माद्वरुण पाह्यस्मान् ॥१०॥

हे तेजस्वी वरुणदेव ! सपनामा तर्साउने अथवा ब्वाँसाले झैँ नाश गर्न खोज्ने हाम्रै बन्धुहरूबाट हामीलाई जोगाऊ।

माहं मघोनो वरुण प्रियस्य भूरिदाव्न आ विदं शूनमापेः।
मा रायो राजन्त्सुयमादव स्थां बृहद्वदेम विदथे सुवीराः ॥११॥

हे वरुणदेव ! सबैलाई सन्तुष्ट गराउने ऐश्वर्यवान् दानदाताको सुखसमृद्धिमा हामी कहिल्यै ईर्ष्या नगरौँ, तिनलाई आफन्त मानौँ। हे वरुणदेव ! चाहिएको धन प्राप्त भएपछि हामी अहङ्कारी नबनौँ, असल सन्तानसहित यज्ञमा देवताको स्तुति गरौँ।

[सूक्त - २९]

ऋषि - कूर्म गार्त्समद अथवा गृत्समद। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

धृतव्रता आदित्या इषिरा आरे मत्कर्त रहसूरिवागः।
शृण्वतो वो वरुण मित्र देवा भद्रस्य विद्वाँ अवसे हुवे वः ॥१॥

हे व्रतधारी सर्वत्र गमनशील आदित्यहरू हो ! गोप्य मन्त्रणा गरी हाम्रो पाप टाढा पुऱ्याइदेओ। हे मित्र र वरुणदेव हो ! मङ्गलकारी कार्य जानेकाले हामी संरक्षणका लागि तिमीहरूलाई आह्वान गर्दछौँ। तिमीहरू हाम्रो प्रार्थना स्वीकार गर।

यूयं देवाः प्रमतिर्यूयमोजो यूयं द्वेषांसि सनुतर्युयोत।
अभिक्षत्तारो अभि च क्षमध्वमद्या च नो मृळयतापरं च ॥२॥

हे देवताहरू हो ! तिमीहरू असल बुद्धि भएका तेजस्वी हुनाले द्वेषीको छलकपट प्रकट गराउन समर्थ छौ। तिमीहरू शत्रुनाशक हौ, त्यसैले शत्रु संहार गरी हाम्रो वर्तमान र भविष्य सुखमय गराओ।

किमू नु वः कृणवामापरेण किं सनेन वसव आप्येन।
यूयं नो मित्रावरुणादिते च स्वस्तिमिन्द्रामरुतो दधात ॥३॥

हे आश्रयदाता देवगण ! पहिले गरेका आफ्ना कर्मले हामी तिमीहरूको आदरसत्कार कति मात्रै गरौँ ? हे मित्र, वरुण, अदिति, इन्द्र तथा मरुत्गण ! तिमीहरू सबै देवगण हाम्रो कल्याण गरिदेऊ।

**हये देवा यूयमिदापयः स्थ ते मृडत नाधमानाय मह्यम्।**
**मा वो रथो मध्यमवाड़ृते भून्मा युष्मावत्स्वापिषु श्रमिष्म ॥४॥**

ताहरू हो ! हाम्रा हितैषि सखा तिमीहरू नै हौ, त्यसैले स्तुति गर्दछौं। हामीलाई सुखी ।। हाम्रा यज्ञमा तिमीहरूको रथ तीव्र गतिले आओस्। तिमीहरूजस्ता मित्र पाएर हामी भरि स्तुति गरेर कहिल्यै थाक्दैनौं।

**प्र व एको मिमय भूर्यागो यन्मा पितेव कितवं शशास।**
**आरे पाशा आरे अघानि देवा मा माधि पुत्रे विमिव ग्रभीष्ट ॥५॥**

हे देवताहरू ! हामीलाई तिमीहरूले पिताले झैँ सल्लाह दिएका छौ। त्यसले हामी आफ्ना अनकौं पाप नष्ट गर्‍यौं। हे देवताहरू हो ! पाप र पाश हामीबाट टाढै रहून्। व्याधाले पक्षी टिपेझैं सन्तानका माझबाट हामीलाई नखोस।

**अर्वाञ्चो अद्या भवता यजत्रा आ वो हार्दि भयमानो व्ययेयम्।**
**त्राध्वं नो देवा निजुरो वृकस्य त्राध्वं कर्तादवपदो यजत्राः ॥६॥**

हे पूज्य देवगण ! तिमीहरू आज हामीसमक्ष प्रकट होओ। हामी भयभीत हुँदा तिमीहरूको हृदयजस्तै प्रिय आश्रय प्राप्त गरौं। हे पूज्य देवगण ! कष्टदायी दुष्ट शत्रुबाट आपद् कालमा अनेकौं किसिमले हाम्रो रक्षा गर।

**माहं मघोनो वरुण प्रियस्य भूरिदाव्न आ विदं शूनमापेः।**
**मा रायो राजन्त्सुयमादव स्थां बृहद्वदेम विदथे सुवीराः ॥७॥**

हे वरुणदेव ! सबैलाई सन्तुष्ट गराउने ऐश्वर्यवान् दानदाताको सुखसमृद्धिमा हामी कहिल्यै ईर्ष्या नगरौं, उनलाई आफन्त मानौं। हे वरुणदेव ! चाहिएको धन प्राप्त भएपछि हामी अहङ्कारी नबनौं, असल सन्तानसहित यज्ञमा देवताको स्तुति गरौं।

[सूक्त – ३०]

**ऋषि** – गृत्समद भार्गव शौनक। **देवता** – इन्द्र सोम बृहस्पति। **छन्द** – त्रिष्टुप् जगती।

**ऋतं देवाय कृण्वते सवित्र इन्द्रायाहिघ्ने न रमन्त आपः।**
**अहरहर्यात्यक्तुरपां कियात्या प्रथमः सर्ग आसाम् ॥१॥**

जलप्रेरक, तेजस्वी, सर्वप्रेरक, वृत्रहन्ता इन्द्रदेवका निम्ति गरिने यज्ञकर्म कहिल्यै रोकिँदैन। यज्ञकर्म प्रचलित भएदेखि याजकगण सदैव गरिरहेका छन्।

**यो वृत्राय सिनमत्राभरिष्यत्प्र तं जनित्री विदुष उवाच।**
**पथो रदन्तीरनु जोषमस्मै दिवेदिवे धुनयो यन्त्यर्थम् ॥२॥**

वृत्रलाई अन्न जसले प्रदान गर्दछ, त्यसको कुरा समुद्रदेवलाई उनकी आमा अदितिले भनिदिन्छिन्। नदीहरू इन्द्रदेवको कामनाअनुसार मार्ग बनाउँदै निरन्तर समुद्रतर्फ प्रवाहित हुन्छन्।

**ऊर्ध्वो ह्यस्थादध्यन्तरिक्षेऽधा वृत्राय प्र वधं जभार।**
**मिहं वसान उप हीमदुद्रोत्तिग्मायुधो अजयच्छत्रुमिन्द्रः ॥३॥**

अन्तरिक्षका मेघमा लुकेका वृत्रले इन्द्रदेवलाई धेरै माथिबाट आक्रमण गरेको थियो। इन्द्रदेवले आफ्नो वज्र वृत्रमाथि प्रहार गरे। त्यस धारिला हतियारले इन्द्रदेवले वृत्रमाथि विजय प्राप्त गरे।

**बृहस्पते तपुषाश्नेव विध्य वृकद्वरसो असुरस्य वीरान्।**
**यथा जघन्थ धृषता पुरा चिदेवा जहि शत्रुमस्माकमिन्द्र ॥४॥**

हे बृहस्पतिदेव ! असुरपुत्रलाई विद्युतसरि दुःख दिने आफ्ना वज्रले टुक्रा गराऊ र दुःख देऊ। हे इन्द्रदेव ! उहिले नै आफ्ना वज्रले शत्रुमाथि विजय पाएझैं हाम्रा शत्रुलाई आज पनि नाश गरिदेऊ।

**अव क्षिप दिवो अश्मानमुच्चा येन शत्रुं मन्दसानो निजूर्वाः।**
**तोकस्य सातौ तनयस्य भूरेरस्माँ अर्धं कृणुतादिन्द्र गोनाम् ॥५॥**

हे इन्द्रदेव ! स्तोताका स्तुतिबाट प्रसन्न भएर तिमीले शत्रु विनाश गर्ने वज्र द्युलोकबाट हाम्रा शत्रुमाथि फ्याँक। हामीलाई भरणपोषणका लागि योग्य साधन र गाईरूपी धनले समृद्ध बनाऊ। त्यसबाट हामी आफ्ना शाखासन्तानको पालनपोषण गर्न सकौं।

प्र हि क्रतुं वृहथो यं वनुथो रध्रस्य स्थो यजमानस्य चोदौ।
इन्द्रासोमा युवमस्माँ अविष्टमस्मिन्भयस्थे कृणुतमु लोकम् ॥६॥

हे इन्द्रदेव र सोमदेव ! तिमीहरू दुवै स्तोतालाई रुचाउँछौ र उनीहरूलाई यज्ञको उन्नतिमा प्रेरणा दिन्छौ। हामी संसारमा भयभीत हुँदा तिमीहरू दुवैले रक्षा गर र हाम्रा जीवनमा उन्नति गराओ।

न मा तमन्न श्रमन्नोत तन्द्रन्न वोचाम मा सुनोतेति सोमम्।
यो मे पृणाद्यो ददद्यो निबोधाद्यो मा सुन्वन्तमुप गोभिरायत् ॥७॥

सोमरस प्रशोधित गर्दा उत्तम ज्ञान तथा श्रेष्ठ धन प्रदान गरेर कामना पूरा गराउने, गाईसहित हामीकहाँ आउने इन्द्रदेवले हामीलाई कष्ट नदिऊन्। उनले श्रमशक्ति प्रदान गरुन्, हामीलाई अल्छी नवनाऊन्। हामी कहिल्यै कसैसित इन्द्रदेवका लागि सोमरस तयार नगर नभनौँ।

सरस्वति त्वमस्माँ अविड्ढि मरुत्वती धृषती जेषि शत्रून्।
त्वं चिच्छर्धन्तं तविषीयमाणमिन्द्रो हन्ति वृषभं शण्डिकानाम् ॥८॥

हे सरस्वती माता ! मरुत्हरूसितै दृढतापूर्वक हाम्रा शत्रुमाथि विजय प्राप्त गर्दै हाम्रो रक्षा गर। अहङ्कारी र अत्यन्तै बलशाली शाण्डवंशी शण्डामर्क राक्षसलाई इन्द्रदेवले मारेका थिए।

यो नः सनुत्य उतवा जिघत्नुरभिख्याय तं तिगितेन विध्य।
बृहस्पत आयुधैर्जेषि शत्रून्द्रुहे रीषन्तं परि धेहि राजन् ॥९॥

हे बृहस्पतिदेव ! हाम्रा बीचमा हिंस्रक शत्रु लुकेका छ भने खोजेर धारिलो हतियारले त्यसलाई घोच। हाम्रा शत्रुमाथि शस्त्रास्त्रले विजय प्राप्त गर। हे राजा बृहस्पतिदेव ! द्रोहीहरूमाथि हिंस्रक अस्त्र फ्याँक।

अस्माकेभिः सत्वभिः शूर शूरैर्वीर्या कृधि यानि ते कर्त्वानि।
ज्योगभूवन्ननुधूपितासो हत्वी तेषामा भरा नो वसूनि ॥१०॥

हे शूरवीर इन्द्रदेव ! हाम्रा बलशाली वीरहरूको सहयोग लिएर गर्नुपर्ने पराक्रमका काम सबै गर। अहङ्कारी शत्रु मारिदेऊ र उनीहरूको धन हामीलाई देऊ।

तं वः शर्धं मारुतं सुम्नयुर्गिरोप ब्रुवे नमसा दैव्यं जनम्।
यथा रयिं सर्ववीरं नशामहा अपत्यसाचं श्रुत्यं दिवेदिवे ॥११॥

हे मरुत्गण ! सुखको कामनाले हामी तिमीहरूका तेजस्वी पराक्रमको स्तुति गर्दछौँ। तिमीहरूलाई शिर झुकाएर प्रशंसा गर्दछौँ। हामीलाई पराक्रमी सन्ततिले युक्त यशस्वी धन सधैँ प्रदान गर।

[सूक्त - ३१]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - विश्वेदेवा। छन्द - जगती त्रिष्टुप्।

अस्माकं मित्रावरुणावतं रथमादित्यै रुद्रैर्वसुभिः सचाभुवा।
प्र यद्वयो न पप्तन्वस्मनस्परि श्रवस्यवो हृषीवन्तो वनर्षदः ॥१॥

हे मित्र तथा वरुणदेव ! वनको चरीझैँ अन्नको खोजीमा हाम्रो मन एक ठाउँबाट अर्को ठाउँमा जाँदा आदित्य, रुद्र र वसुहरूका साथ संयुक्त रूपमा हाम्रा रथको रक्षा गर।

अध स्मा न उदवता सजोषसो रथं देवासो अभि विक्षु वाजयुम्।
यदाशवः पद्याभिस्तित्रतो रजः पृथिव्याः सानौ जङ्घनन्त पाणिभिः ॥२॥

यस रथमा नारिएका छिटो कुद्ने घोडाले आफ्नो बाटो पूरा गर्दै खुट्टाले पृथ्वीको पृष्ठमा कोतर्दै हिँडेको छ। हे एकसमान प्रीति भएका देवगण ! त्यस्ता बेलामा अन्नको खोजी गर्ने हाम्रा रथलाई प्रजातर्फ जानका लागि प्रेरित गर।

उत स्य न इन्द्रो विश्वचर्षणिर्दिवः शर्धेन मारुतेन सुक्रतुः।
अनु नु स्थात्यवृकाभिरूतिभी रथं महे सनये वाजसातये ॥३॥

सर्वद्रष्टा, उत्तम कर्मा इन्द्रदेव मरुत्हरूका पराक्रमले युक्त हुँदै द्युलोकबाट आएर हाम्रा रथमा विराजमान होऊन् र धनधान्यले सम्पन्न बनाउँदै असल सुरक्षा प्रदान गरुन्।

उत स्य देवो भुवनस्य सक्षणिस्त्वष्टा ग्नाभिः सजोषा जूजुवद्रथम्।
इडा भगो बृहद्दिवोत रोदसी पूषा पुरन्धिरश्विनावधा पती ॥४॥

यशस्वी भईकन समान भावले सबैसित प्रेम गर्ने सृष्टिकर्ता त्वष्टादेव आफ्ना तेजस्वी शक्तिले हाम्रो रथ चलाऊन्। इडा, अत्यन्त कान्तिवान् भगदेव, ब्रह्माण्डको व्यवस्था गर्ने पूषादेव, सबैका पोषक दुवै अश्विनीकुमार र द्यावापृथिवीले हाम्रो रथ चलाऊन्।

उत त्ये देवी सुभगे मिथूदृशोषासानक्ता जगतामपीजुवा।
स्तुषे यद्वां पृथिवि नव्यसा वचः स्थातुश्च वयस्त्रिवया उपस्तिरे ॥५॥

परम तेजस्वी, ऐश्वर्यले युक्त, एकअर्काप्रति स्नेह भएका दिन र रात्रिले स्थावर र जङ्गमलाई प्रेरणा दिन्छन्। हे द्यावापृथिवी ! तिमीहरू दुवैलाई हामी नवीन स्तोत्रले तीन किसिमबाट स्तुति गर्दै हविष्यात्र समर्पित गर्दछौं।

उत वः शंसमुशिजामिव श्मस्यहिर्बुध्न्योऽज एकपादुत।
त्रित ऋभुक्षाः सविता चनो दधेऽपां नपादाशुहेमा धिया शमि ॥६॥

हे देवताहरू हो ! सज्जनले भैं हामी स्तुति गर्न चाहन्छौं। सर्वव्यापी अहिर्बुध्नय, अज एकपात, तीनै लोकमा व्याप्त सवितादेव र प्राणीका पालक अग्निदेव हाम्रा स्तुतिबाट हर्षित भएर मनगे अन्न प्रदान गरुन्।

एता वो वश्म्युद्यता यजत्रा अतक्षन्नायवो नव्यसे सम्।
श्रवस्यवो वाजं चकानाः सप्तिर्न रथ्यो अह धीतिमश्याः ॥७॥

हे पूज्य देवताहरू हो ! तिमीहरू सबैबाट स्तुत्य छौ। त्यसैले हामी तिमीहरूको स्तुति गर्न चाहन्छौं। अन्न र बलको कामनाले यशस्वी मानिसले तिमीहरूका लागि स्तुति बनाएका छन्। रथमा नारिएको घोडाभैं हामी सधैं काममा लागिरहौं।

[सूक्त - ३२]

**ऋषि** – गृत्समद भार्गव। **देवता** – द्यावापृथिवी इन्द्र त्वष्टा। **छन्द** – जगती अनुष्टुप्।

अस्य मे द्यावापृथिवी ऋतायतो भूतमवित्री वचसः सिषासतः।
ययोरायुः प्रतरं ते इदं पुर उपस्तुते वसूयुर्वा महो दधे ॥१॥

हे द्यावापृथिवी ! प्रसन्न गर्न चाहने स्तोताका तिमीहरू आश्रयदाता हौ। तिमीहरूको स्तुति हामी गर्दछौं। हामीलाई उत्तम बल र धन प्रदान गर।

मा नो गुह्या रिप आयोरहन्दभन्मा न आभ्यो रीरधो दुच्छुनाभ्यः।
मा नो वि यौः सख्या विद्धि तस्य नः सुम्नायता मनसा तत्त्वेमहे ॥२॥

हे इन्द्रदेव ! शत्रुको गुप्त मायाले दिउँसो वा राति हामीलाई मार्न नपाओस्। दुःखदायी आपद्ले हामीलाई नसताओस्। हामी तिम्रा मित्रताको कामना गर्दछौं। त्यसैले सुखको कामना गर्ने हाम्रो भाव बुझ र त्यसलाई विघ्नि नदेऊ।

अहेडता मनसा श्रुष्टिमावह दुहानां धेनुं पिप्युषीमसश्चतम्।
पद्याभिराशुं वचसा च वाजिनं त्वां हिनोमि पुरुहूत विश्वहा ॥३॥

हे इन्द्रदेव ! तिमी द्रुतगामी र मृदुभाषी छौ। प्रसन्नतापूर्वक हामीलाई सुखदायी, दुधालु र बलियो गाई देऊ। हामी दिनरात तिम्रो स्तुति गर्दछौं।

राकामहं सुहवां सुष्टुती हुवे शृणोतु नः सुभगा बोधतु त्मना।
सीव्यत्वपः सूच्याच्छिद्यमानया ददातु वीरं शतदायमुक्थ्यम् ॥४॥

असल स्तोत्रले आह्वान गर्न योग्य राका र पूर्णिमादेवीलाई हामी आह्वान गर्दछौं। यी ऐश्वर्यशाली देवीहरू हाम्रो प्रार्थना स्वीकार गरेर कहिल्यै पनि ननासिने सङ्कल्परूपी कर्म बलियो बनाऊन् र प्रशंसनीय धन र वीर सन्तान प्रदान गरुन्।

यास्ते राके सुमतयः सुपेशसो याभिर्ददासि दाशुषे वसूनि।
ताभिर्नो अद्य सुमना उपागहि सहस्रपोषं सुभगे रराणा ॥५॥

हे ऐश्वर्यशालिनी राकादेवी ! तिमी जुन उत्तम बुद्धिले याज्ञिकहरूलाई उत्तम धन प्रदान गर्दछ्यौ, आज उनै श्रेष्ठ बुद्धिले युक्त भएर अनेकौं किसिमका श्रेष्ठ धन र पौष्टिक अन्नसहित हामीकहाँ आऊ।

सिनीवालि पृथुष्टुके या देवानामसि स्वसा।
जुषस्व हव्यमाहुतं प्रजां देवि दिदिड्ढि नः ॥६॥

हे विराट् स्वरूप भएकी सिनीवालीदेवी ! तिमी देवताहरूकी बहिनी हौ। हे देवी ! अग्निमा समर्पित गरिएको आहुति ग्रहण गरेर हामीलाई असल सन्तान देऊ।

या सुबाहुः स्वङ्गुरिः सुषूमा बहुसूवरी।
तस्यै विश्पत्न्यै हविः सिनीवाल्यै जुहोतन ॥७॥

हे याजकहरू हो ! जुन सिनीवालीदेवी राम्रा पाखुरा र औंलाले असल पदार्थ र प्रजा उत्पन्न गर्दछिन्, उनै प्रजापालक सिनीवाली देवीका लागि हविष्यान्न प्रदान गर।

या गुङ्गूर्या सिनीवाली या राका या सरस्वती।
इन्द्राणीमह्व ऊतये वरुणानीं स्वस्तये ॥८॥

गुंगू, सिनीवाली, राका, सरस्वती आदि जुनसुकै नाम भएका सबै देवीहरूलाई हामी आफ्नो संरक्षणको कामनाले आह्वान गर्दछौं। इन्द्राणी र वरुणानी देवीलाई पनि आफ्नै कल्याणको कामनाले आह्वान गर्दछौं।

[सूक्त - ३३]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - रुद्र। **छन्द** - त्रिष्टुप्।

आ ते पितर्मरुतां सुम्नमेतु मा नः सूर्यस्य सन्दृशो युयोथाः।
अभि नो वीरो अर्वति क्षमेत प्र जायेमहि रुद्र प्रजाभिः ॥१॥

हे मरुत्हरू हो ! तिमीहरूको सुख हामीलाई प्राप्त होस्। हामीलाई सूर्यको उत्तम प्रकाशबाट कहिल्यै नछुटाओ। हाम्रा वीर सन्तानले सङ्ग्राममा शत्रु पराजित गरुन्। हामी उत्तम सन्ततिले प्रसिद्धि प्राप्त गरौं।

त्वादत्तेभी रुद्र शन्तमेभिः शतं हिमा अशीय भेषजेभिः।
व्य१स्मद्द्वेषो वितरं व्यंहो व्यमीवाश्चातयस्वा विषूचीः ॥२॥

हे रुद्रदेव ! तिमीले दिएको सुखदायी औषधि सेवन गरेर हामी सय वर्षसम्म जीवित रहौं। द्वेषभाव र पाप हटएर हाम्रा शरीरमा व्याप्त समस्त रोग नष्ट गर।

श्रेष्ठो जातस्य रुद्र श्रियासि तवस्तमस्तवसां वज्रबाहो।
पर्षि णः पारमंहसः स्वस्ति विश्वा अभीती रपसो युयोधि ॥३॥

हे रुद्रदेव ! हामी सबैभन्दा बढी ऐश्वर्यशाली बनौं। हे आयुधधारी रुद्रदेव ! तिमी बलवान्हरूमा सबैभन्दा बढी बलवान् छौ। हामीलाई पापबाट मुक्त गर र आपद् हामीदेखि टाढा पार।

मा त्वा रुद्र चुक्रुधामा नमोभिर्मा दुष्टुती वृषभ मा सहूती।
उन्नो वीराँ अर्पय भेषजेभिर्भिषक्तमं त्वा भिषजां शृणोमि ॥४॥

हे रुद्रदेव ! वैद्यहरूमध्ये पनि उत्तम वैद्यका रूपमा तिमी चिनिएका छौ। औषधि गरेर हाम्रा सन्तानलाई बलशाली बनाऊ। झुटो निन्दित स्तुतिले वा साधारण मानिसलाई बोलाएझैं तिमीलाई जिस्क्याउँदै नबोलाऔं।

हवीमभिर्हवते यो हविर्भिरव स्तोमेभी रुद्रं दिषीय।
ऋदूदरः सुहवो मा नो अस्यै बभ्रुः सुशिप्रो रीरधन्मनायै ॥५॥

रुद्रदेवलाई हविष्यान्न समर्पित गरेर स्तुतिले आह्वान गरिन्छ। उनैलाई हामी स्तोत्रले शान्त पनि गरौं। कोमल हृदय भएका, तेजस्वी, हँसिलो मुख एवं असल स्वभाव भएका र उचित किसिमले बोलाउन योग्य रुद्रदेवले ईर्ष्यालुहरूबाट हामीलाई हिंसित नगराऊन्।

उन्मा ममन्द वृषभो मरुत्वान्त्वक्षीयसा वयसा नाधमानम्।
घृणीव च्छायामरपा अशीया विवासेयं रुद्रस्य सुम्नम् ॥६॥

कामना पूर्ति गर्ने मरुत्हरूले युक्त हे रुद्रदेव ! ऐश्वर्यको कामना भएका हामीलाई तेजस्वी अन्नले सन्तुष्ट गराऊ। घामले सताइएका व्यक्तिले छायाको शरण लिएझैं हामी पनि पापरहित भएर रुद्रदेवको सेवा गर्दै उनको सुख प्राप्त गरौं।

क्व१स्य ते रुद्र मृळयाकुर्हस्तो यो अस्ति भेषजो जलाषः।
अपभर्ता रपसो दैव्यस्याभी नु मा वृषभ चक्षमीथाः ॥७॥

हे रुद्रदेव ! तिमीले औषधि प्रदान गरेर सुखी बनाउने सुखदायी हात कहाँ छ ? हे बलशाली रुद्रदेव ! तिमी दैवी आपत्ति हटाउँछौ। त्यसैले हाम्रो अपराध क्षमा गर।

प्र बभ्रवे वृषभाय श्वितीचे महो महीं सुष्टुतिमीरयामि।
नमस्या कल्मलीकिनं नमोभिर्गृणीमसि त्वेषं रुद्रस्य नाम ॥८॥
हे स्तोताहरू ऐश्वर्यप्रदाता, सबैका पालक र सेतो आभायुक्त रुद्रदेवलाई हामी उचित स्तुति गर्दछौं। हे स्तोताहरू हो ! हामी तेजस्वी रुद्रदेवका उज्ज्वल नामको सङ्कीर्तन गर्दछौं, तिमीहरू पनि स्तुतिका साथ पूजा गर।

स्थिरेभिरङ्गैः पुरुरूप उग्रो बभ्रुः शुक्रेभिः पिपिशे [illegible]।
ईशानादस्य भुवनस्य भूरेर्न वा उ योषद्रुद्रादसुर्यम् [illegible]
तेजस्वी रुद्रदेव सुनका गहनाले सबैका पालनकर्ता, बलियो शरीर भएका, अनेकौं रूपका स्वा[illegible], [illegible]पोषण गर्ने हु[illegible]। असुर संहारक शक्ति यिनीबाट सजिएका छन्। यी समस्त भुवनका स्वामी र भ[illegible] कहिल्यै अलग हुँदैन।

अर्हन्बिभर्षि सायकानि धन्वार्हन्निष्कं यजतं विश्वरूपम्।
अर्हन्निदं दयसे विश्वमभ्वं न वा ओजीयो रुद्र त्वदस्ति ॥१०॥
हे रुद्रदेव ! तिमी धनुषबाण धारण गर्न योग्य छौ। स्वर्ण[illegible]युक्त अनेकौं रूप हुने तिमी पूजा गर्न योग्य छौ। हे देवता ! तिमीभन्दा तेजस्वी अरू कोही [illegible]। तिमी नै विशाल विश्वलाई संरक्षण गर्दछौ।

स्तुहि श्रुतं गर्तसदं युवानं मृगं न भीममुपहत्नुमुग्रम्।
मृडा जरित्रे रुद्र स्तवानोऽन्यं ते अस्मन्नि वपन्तु सेनाः ॥११॥
हे स्तोताहरू हो ! यशस्वी, रथमा विराजमान, तरुण, सिंहजस्तै भय उत्पन्न गर्ने र शत्रु संहारक बलशाली रुद्रदेवलाई स्तुति गर। हे रुद्रदेव ! तिमी स्तोतालाई सुखी बनाऊ। तिम्रा सेनाले शत्रु संहार गरोस्।

कुमारश्चित्पितरं वन्दमानं प्रति नानाम रुद्रोपयन्तम्।
भूरेर्दातारं सत्पतिं गृणीषे स्तुतस्त्वं भेषजा रास्यस्मे ॥१२॥
हे रुद्रदेव ! पुत्रले पितालाई प्रणाम गरेझैं तिम्रा नजिक आएर तिमीलाई हामी प्रणाम गर्दछौं। हे सज्जनका स्वामी दानदाता रुद्रदेव ! हामी तिम्रो स्तुति गर्दछौं। स्तुति गरेपछि हामीलाई औषधि प्रदान गर।

या वो भेषजा मरुतः शुचीनि या शन्तमा वृषणो या मयोभु।
यानि मनुरवृणीता पिता नस्ता शं च योश्च रुद्रस्य वश्मि ॥१३॥
हे बलशाली मरुत्‌हरू हो ! तिमीहरूका कल्याणकारी, पवित्र र सुखदायी औषधिको छनोट हाम्रा पिता मनुले गरेका थिए। उसै कल्याणकारी रोगनिवारक औषधिको हामी इच्छा गर्दछौं।

परि णो हेती रुद्रस्य वृज्याः परि त्वेषस्य दुर्मतिर्मही गात्।
अव स्थिरा मघवद्भ्यस्तनुष्व मीढ्वस्तोकाय तनयाय मृड ॥१४॥
रुद्रदेवका महान् आयुध, पीडादायी धारिला शस्त्र र दुर्बुद्धि हामीदेखि टाढै रहून्। हे सुखदायी रुद्रदेव ! ऐश्वर्यशाली याजकप्रति आफ्नो बलियो धनुषको प्रत्यञ्चा खुकुलो पार र हाम्रा सन्तानलाई सुखी बनाऊ।

एवा बभ्रो वृषभ चेकितान यथा देव न हृणीषे न हंसि।
हवनश्रुन्नो रुद्रेह बोधि बृहद्वदेम विदथे सुवीराः ॥१५॥
हे तेजस्वी, सुखदायी, सर्वज्ञ र प्रार्थना स्वीकार गर्ने रुद्रदेव ! हामीसित कहिल्यै नरिसाऊ, हामीलाई कहिल्यै नष्ट नगर। हामीलाई मार्गदर्शन गराऊ। उत्तम सन्ततिका साथ हामी यज्ञमा तिमीलाई उत्तम स्तुति गर्दछौं।

[सूक्त – ३४]

**ऋषि** – गृत्समद भार्गव शौनक। **देवता** – मरुद्गण। **छन्द** – जगती त्रिष्टुप्।

धारावरा मरुतो धृष्ण्वोजसो मृगा न भीमास्तविषीभिरर्चिनः।
अग्नयो न शुशुचाना ऋजीषिणो भृमिं धमन्तो अप गा अवृण्वत ॥१॥
मेघका जलधारा ढाक्ने, शत्रु संहारक, बलयुक्त, सिंहझैं भयकारक, अग्निझैं तेजस्वी, सन्मार्गगामी र गति उत्पन्न गर्ने पूज्य मरुत्‌ले सूर्यको रश्मि उत्पन्न गरेका हुन्।

द्यावो न स्तृभिश्चितयन्त खादिनो व्यभ्रिया न द्युतयन्त वृष्टयः।
रुद्रो यद्वो मरुतो रुक्मवक्षसो वृषाजनि पृश्न्याः शुक्र ऊधनि ॥२॥

हे सुनका गहनाले सजिएका मरुतहरू हो ! नक्षत्रले द्युलोक सुशोभित भएझैं तिमीहरू मेघमा विद्यमान विद्युतले शोभायमान छौ। तिमीहरूलाई रुद्रदेवले पृथ्वीका पेटबाट उत्पन्न गरेका हुन्। तिमीहरू नै शत्रुनाशक र जल वर्षा गराउने हौ।

उक्षन्ते अश्वाँ अत्याँ इवाजिषु नदस्य कर्णैस्तुरयन्त आशुभिः।
हिरण्यशिप्रा मरुतो दविध्वतः पृक्षं याथ पृषतीभिः समन्यवः ॥३॥

मरुत्हरू आफ्ना घोडालाई दौड प्रतियोगीजस्तै बलवान् बनाउँछन्। शब्द गर्ने द्रुतगामी घोडा युद्धमा वेगका साथ जान्छन्। हे सुवर्णाभूषणले अलङ्कृत मरुत् हो ! तिमीहरू शत्रुलाई कम्पित गर्दछौ र अन्न आदिका नजिकै वर्सने बादलमा पुग्छौ।

पृक्षे ता विश्वा भुवना ववक्षिरे मित्राय वा सदमा जीरदानवः।
पृषदश्वासो अनवभ्रराधस ऋजिप्यासो न वयुनेषु धूर्षदः ॥४॥

मरुतहरू मित्रजस्तै भएर सबै भुवनलाई आश्रय प्रदान गर्दछन्। टाटे घोडाले सजिएका, अक्षय अन्न प्रदान गर्ने दानशील मरुत्हरू धर्मको अनुसरण गर्ने याजकलाई उन्नति पथमा लैजान्छन्।

इन्धन्वभिर्धेनुभी रप्शदूधभिरध्वस्मभिः पथिभिर्भ्राजदृष्टयः।
आ हंसासो न स्वसराणि गन्तन मधोर्मदाय मरुतः समन्यवः ॥५॥

हे दीप्तिमान् आयुध र रिसजोस हुने मरुत् हो ! वर्सने बादलसँगै विघ्नरहित मार्गबाट गाई लिएर सोमरस पान गर्दै आनन्द मनाउन हाँस गुँडतिर गएझैं यज्ञमा आओ।

आ नो ब्रह्माणि मरुतः समन्यवो नरां न शंसः सवनानि गन्तन।
अश्वामिव पिप्यत धेनुमूधनि कर्ता धियं जरित्रे वाजपेशसम् ॥६॥

रिस र जोस भएका हे मरुत् हो ! शूरवीर आएझैं हामीले शोधित गरेका सोमरसका नजिकै आओ। हाम्रा गाईको पछिल्लो भाग घोडीजस्तै बलियो पार र याजकको यज्ञ अन्नयुक्त गराओ।

तं नो दात मरुतो वाजिनं रथ आपानं ब्रह्म चितयद्दिवेदिवे।
इषं स्तोतृभ्यो वृजनेषु कारवे सनिं मेधामरिष्टं दुष्टरं सहः ॥७॥

हे वीर मरुतहरू हो ! हामीलाई अन्न र सन्ततिले युक्त गराओ। तिमीहरू आउने बेलामा ती सन्ततिले यश गाऊन्। स्तोताहरूलाई अन्न प्रदान गर। युद्धका समयमा पराक्रमी स्तोतालाई दानवृत्ति, युद्धकौशल, सद्बुद्धि र अभयसँगै अजेय सहनशीलता प्रदान गर।

यद्युञ्जते मरुतो रुक्मवक्षसोऽश्वान्रथेषु भग आ सुदानवः।
धेनुर्न शिश्वे स्वसरेषु पिन्वते जनाय रातहविषे महीमिषम् ॥८॥

ऐश्वर्यशाली, दानशील मरुत्हरूका वक्षस्थलमा सुवर्णका आभूषणहरू सुशोभित छन्। गाईले बाछालाई दुध दिएझैं मरुतहरू घोडालाई रथमा जोत्दै हवि प्रदान गर्ने याजकका घरमा भरपूर मात्रामा अन्न प्रदान गर्दछन्।

यो नो मरुतो वृकताति मर्त्यो रिपुर्दधे वसवो रक्षता रिषः।
वर्तयत तपुषा चक्रियाभि तमव रुद्रा अशसो हन्तना वधः ॥९॥

हे आश्रय प्रदाता मरुत्हरू हो ! जुन मानिसले हामीसित ब्वाँसाको जस्तै शत्रुता गर्दछन्, ती हिंसकहरूबाट हाम्रो रक्षा गर। त्यस्ता दुःख दिने तत्त्वलाई चारै तिरबाट परास्त गराओ। हे रुद्रदेव ! शत्रुका हतियार पर पुन्याएर नष्ट गराऊ।

चित्रं तद्वो मरुतो याम चेकिते पृश्न्या यदूधरप्यापयो दुहुः।
यद्वा निदे नवमानस्य रुद्रियास्त्रितं जराय जुरतामदाभ्याः ॥१०॥

हे मरुतहरू हो ! तिमीहरू गाईको दुध दोहन गरेर दुध पिउँछौ र सबैसित मित्रभाव राख्दछौ। तिमीहरूले आफ्ना स्तोताका निन्दकको हत्या गरेका थियौ र त्रित ऋषिको शत्रु संहार गरेका थियौ। तिमीहरूको यो आश्चर्यजनक पराक्रम सबैले जानेका छन्।

तान्वो महो मरुत एवयाव्नो विष्णोरेषस्य प्रभृथे हवामहे।
हिरण्यवर्णान्ककुहान्यतस्रुचो ब्रह्मण्यन्तः शंस्यं राध ईमहे ॥११॥

हे द्रुतगामी मरुतहरू हो ! हामी आफ्ना व्यापक हित पूर्तिको कामना गर्दै तिमीहरूलाई आह्वान

गर्दछौं। हे सुवर्णजस्तै तेजस्वी मरुतहरू हो ! पुण्य कार्यमा लागेका हामी याजकहरू तिमीबाट प्रशंसनीय धनको माग गर्दछौं।

**ते दशग्वाः प्रथमा यज्ञमूहिरे ते नो हिन्वन्तूषसो व्युष्टिषु।**
**उषा न रामीररुणैरपोर्णुते महो ज्योतिषा शुचता गोअर्णसा ॥१२॥**

दसै इन्द्रियलाई आफ्ना वशमा गर्ने अद्वितीय वीर मरुतहरूले पहिले यज्ञ गरे। उषा काल आरम्भ हुनासाथ उनले हामीलाई प्रेरित गरुन्। उषाका अरुणिमाले रातको अन्धकार हटाएझैं मरुतहरू तेजस्वी किरणले सम्पूर्ण विश्वलाई प्रकाशित गर्दछन्।

**ते क्षोणीभिररुणेभिर्नाञ्जिभी रुद्रा ऋतस्य सदनेषु वावृधुः।**
**निमेघमाना अत्येन पाजसा सुश्चन्द्रं वर्णं दधिरे सुपेशसम् ॥१३॥**

रुद्रका पुत्र मरुतहरू अरुण आभासम्पन्न वस्त्र र आभूषणले सजिँदा जलको निवासका रूपमा रहेका मेघको उन्नति हुन्छ। मरुतहरूले आपसमा मिलेर वेगयुक्त बलले जल ल्याउँदाखेरि हर्षप्रदायक र मनोहर सौन्दर्य धारण गर्दछन्।

**ताँ इयानो महि वरूथमूतय उप घेदेना नमसा गृणीमसि।**
**त्रितो न यान्पञ्च होतृनभिष्टय आववर्तदवराञ्चक्रियावसे ॥१४॥**

हामी याजकहरू मरुतहरूसित प्रशंसनीय धनको याचना गर्दै आफ्नो संरक्षणका लागि स्तोत्रले उनीहरूलाई स्तुति गर्दछौं। अत्यन्त श्रेष्ठ मरुतहरूले पाँच किसिमका याजकलाई चक्ररूपी हतियारले संरक्षण प्रदान गर्न त्रित ऋषिलाई बोलाएका थिए।

**यया रध्रं पारयथात्यंहो यया निदो मुञ्चथ वन्दितारम्।**
**अर्वाची सा मरुतो या व ऊतिरो षु वाश्रेव सुमतिर्जिगातु ॥१५॥**

हे मरुतहरू हो ! तिमीहरू सक्षम संरक्षणले याजकलाई पापबाट जोगाउँछौ। उसै संरक्षणले स्तोतालाई निन्दा गर्नेहरूबाट मुक्त गराउँछौ। त्यही सक्षम संरक्षण हामीलाई प्रदान गर।

[सूक्त - ३५]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - अपांनपात्। छन्द - त्रिष्टुप्।

**उपेमसृक्षि वाजयुर्वचस्यां चनो दधीत नाद्यो गिरो मे।**
**अपां नपादाशुहेमा कुवित्स सुपेशसस्करति जोषिषद्धि ॥१॥**

अन्न र बलको कामना गर्दै हामी स्तुति उच्चारण गर्दछौं। द्रुतगामी अग्निदेवले हाम्रो स्तुति स्वीकार गर्दै अन्न आदि पुष्ट बनाऊन् र हामीलाई उत्तम रूप प्रदान गरुन्।

**इमं स्वस्मै हृद आ सुतष्टं मन्त्रं वोचेम कुविदस्य वेदत्।**
**अपां नपादसुर्यस्य मह्ना विश्वान्यर्यो भुवना जजान ॥२॥**

अपांनपात अग्निदेवका लागि हामी हृदयबाट रचित मन्त्र गाउँछौं। उनले त्यो स्वीकार गरुन्। अग्निदेवले असुर संहारक शक्तिका महिमाले समस्त लोक उत्पन्न गरे।

**समन्या यन्त्युप यन्त्यन्याः समानमूर्वं नद्यः पृणन्ति।**
**तमू शुचिं शुचयो दीदिवांसमपां नपातं परि तस्थुरापः ॥३॥**

जलको कुनै प्रवाह नजिक आउँछ र कुनै पर जान्छ। नदी एकोहोरो भएर सागरमा पुग्दछ। त्यहाँ त्यस जलले अपांनपात देवतालाई चारै तिरबाट घेर्दछ।

**तमस्मेरा युवतयो युवानं मर्मृज्यमानाः परि यन्त्यापः।**
**स शुक्रेभिः शिक्वभी रेवदस्मे दीदायानिध्मो घृतनिर्णिगप्सु ॥४॥**

गहनाविनाकै स्त्रीले पनि आफ्ना तन्नेरी पतिलाई सुशोभित गराउँछन्। त्यसै गरी दीप्तियुक्त स्वरूप भएका अपांनपात देवता जलमय प्रकृतिमा विनाइन्धन नै चम्कछन्। यी अपांनपात देवताले हामीलाई अफ्नो तेजस्वी स्वरूपको धन प्रदान गरुन्।

**अस्मै तिस्रो अव्यथ्याय नारीर्देवाय देवीर्दिधिषन्त्यन्नम्।**
**कृता इवोप हि प्रसर्स्रे अप्सु स पीयूषं धयति पूर्वसूनाम् ॥५॥**

अपांनपात देवताका लागि तीन वटी देवीहरू अन्न धारण गर्दछन्। जलका प्रवाहमा परेको कुनै वस्तु सुगमतापूर्वक अगाडि बढेझैं तीन देवीहरू अगाडि बढ्दछन्। अपांनपात देवता जलमा उत्पन्न अमृत सर्वप्रथम पान गर्दछन्।

अश्वस्यात्र जनिमास्य च स्वर्द्रुहो रिषः सम्पृचः पाहि सूरीन्।
आमासु पूर्षु परो अप्रमृष्यं नारातयो वि नशन्नानृतानि ॥६॥

यिनै अपांनपात् देवताबाट नै उच्चैश्रवा अश्व जन्मन्छ। यो अश्व उत्तम सुखदायी छ। हे अपांनपात् देव ! तिमी हिंस्रक भएर द्रोहीबाट याजकलाई रक्षा गर। अपरिपक्व बुद्धि भएका, असत्य आचरण गर्ने र दान नगर्ने व्यक्तिले यी अहिंसनीय अपांनपात देवताको कृपा प्राप्त गर्न सक्दैनन्।

स्व आ दमे सुदुघा यस्य धेनुः स्वधां पीपाय सुभ्वन्नमत्ति।
सो अपां नपादूर्जयन्नप्स्व१न्तर्वसुदेयाय विधते वि भाति ॥७॥

आफ्नै आवासमा रहने अपांनपात देवका गाई सहजै दुहिन्छन्। अपांनपात देवता अन्न वृद्धि गर्दै उत्तम अन्न स्वीकार गर्दछन्। यी देवता जलभित्र बलियो भएर याजकलाई धन दिने विचारले दीप्तिमान् हुन्छन्।

यो अप्स्वा शुचिना दैव्येन ऋतावाजस्र उर्विया विभाति।
वया इदन्या भुवनान्यस्य प्र जायन्ते वीरुधश्च प्रजाभिः ॥८॥

जलमा रहने, सत्ययुक्त अनश्वर, अत्यन्त विशाल, अपांनपात देवता चारै तिरबाट प्रकाशित हुन्छन्। अन्य भुवनहरू यिनका शाखाजस्ता छन्। यिनै अपांनपात देवबाट फलफूल र अन्यान्य वनौषधि प्रजाले पाउने गर्दछन्।

अपां नपादा ह्यस्थादुपस्थं जिह्मानामूर्ध्वो विद्युतं वसानः।
तस्य ज्येष्ठं महिमानं वहन्तीर्हिरण्यवर्णाः परि यन्ति यह्वीः ॥९॥

अपांनपात देव कुटिल गतिले चल्ने मेघमाथि विद्युतले ढाकिएर अन्तरिक्षमा रहन्छन्। यिनले जल वर्षा गराउँछन्, त्यति बेला ठूला नदी चारै तिरबाट प्रवाहित हुँदै यी देवताको महिमा गाउँछन्।

हिरण्यरूपः स हिरण्यसन्दृगपां नपात्सेदु हिरण्यवर्णः।
हिरण्ययात्परि योनेर्निषद्या हिरण्यदा ददत्यन्नमस्मै ॥१०॥

अपांनपात देवता सुवर्णजस्तै स्वरूप भएका, सुवर्णजस्तै आँखा भएका, सुवर्णजस्तै वर्ण भएका छन्। यी देवता सुवर्णमय स्थलमा विराजमान भएर सुशोभित हुन्छन्। सुवर्ण प्रदान गर्ने याजकले उनलाई अन्न दिन्छन्।

तदस्यानीकमुत चारु नामापीच्यं वर्धते नप्तुरपाम्।
यमिन्धते युवतयः समित्था हिरण्यवर्णं घृतमन्नमस्य ॥११॥

सुन्दर नाम भएका अपांनपात देवताको किरण मेघमा बसेर वृद्धि हुन्छ। सुवर्णजस्तो तेजस्वी स्वरूपका अपांनपात देवतालाई जल समर्पित गर्ने औंलाले विस्तृत गराउँछन्।

अस्मै बहूनामवमाय सख्ये यज्ञैर्विधेम नमसा हविर्भिः।
सं सानु मार्ज्मि दिधिषामि बिल्मैर्दधाम्यन्नैः परि वन्द ऋग्भिः ॥१२॥

धेरैमा श्रेष्ठ, सबैका साझा मित्र अपांनपात देवतालाई हामी आहुति र स्तुतिले सेवा गर्दछौं। हामी पर्वतको चुचुरोजस्तै उनको स्वरूप सजाउँछौं। समिधा प्रदीप्त गरेर अन्नको आहुति दिँदै ऋचाद्वारा हामी अपांनपात देवताको वन्दना गर्दछौं।

स ईं वृषाजनयत्तासु गर्भं स ईं शिशुर्धयति तं रिहन्ति।
सो अपां नपादनभिम्लातवर्णोऽन्यस्येवेह तन्वा विवेष ॥१३॥

वर्षा गराउनमा समर्थ अपांनपात देवता जलले पूर्ण वायुमण्डल उत्पन्न गर्दछन्। यी अपांनपात देव सानो बालकझैं समुद्रबाट जल ग्रहण गरेर सबै दिशामा पुऱ्याउँछन्। यी अपांनपात देवता तेजस्वी भएर यस लोकमा अन्य रूपमा रहन्छन्।

अस्मिन्पदे परमे तस्थिवांसमध्वस्मभिर्विश्वहा दीदिवांसम्।
आपो नप्त्रे घृतमन्नं वहन्तीः स्वयमत्कैः परि दीयन्ति यह्वीः ॥१४॥

अपांनपात देवता सर्वोत्कृष्ट स्थानमा विराजमान छन्। निरन्तर प्रवाहशील महान् जलको समूह तिनै तेजस्वी देवतालाई पोषक रस पुऱ्याउँदै घेरेर बस्दछ।

अयांसमग्ने सुक्षितिं जनायायांसमु मघवद्भ्यः सुवृक्तिम्।
विश्वं तद्भद्रं यदवन्ति देवा बृहद्वदेम विदथे सुवीराः ॥१५॥

हे अग्निदेव ! तिमी उत्तम किसिमले आश्रय प्रदान गर्दछौ। त्यसैले सन्तति लाभका निम्ति हामी

तिम्रा सामु आएका छौं। देवताहरूको कल्याणकारी संरक्षण हामीलाई प्राप्त होस् र तिम्रा कृपाले ऐश्वर्यशालीहरूले पनि हामीसित उत्तम व्यवहार गरून्। हामी असल सन्ततिसहित यज्ञमा देवताहरूको यशोगान गर्दछौं।

[सूक्त - ३६]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - इन्द्र मधु मरुत् मित्रावरुण। **छन्द** - जगती।

**तुभ्यं हिन्वानो वसिष्ट गा अपोऽधुक्षन्त्सीमविभिरद्रिभिर्नरः।**
**पिबेन्द्र स्वाहा प्रहुतं वषट्कृतं होत्रादा सोमं प्रथमो य ईशिषे ॥१॥**

हे इन्द्रदेव ! यस सोमरसमा गाईको दुध र जल मिसाइएको छ। याज्ञिकहरूले ढुङ्गामा कुटेर निकालेको यो सोमरस ऊनीको छान्नेले छानेको छ। हे इन्द्रदेव ! तिमी समस्त संसारका शासक हौ। त्यसैले यज्ञमा आएर याजकले वषट् र स्वाहा भन्दै चढाएको सोम सबैभन्दा पहिले पान गर।

**यज्ञैः सम्मिश्लाः पृषतीभिर्ऋष्टिभिर्यामञ्छुभ्रासो अञ्जिषु प्रिया उत।**
**आसद्या बर्हिर्भरतस्य सूनवः पोत्रादा सोमं पिबता दिवो नरः ॥२॥**

यज्ञीय कार्यमा सहायक, भूमि सिञ्चित गर्ने, शस्त्रले सुशोभित, आभूषणप्रेमी, भरण-पोषणमा समर्थ, देवपुत्र तथा नेतृत्व प्रदान गर्ने हे मरुत्गण ! तिमीहरू यज्ञमा राज भएर पवित्र सोमरस पान गर।

**अमेव नः सुहवा आ हि गन्तन नि बर्हिषि सदतना रणिष्टन।**
**अथा मन्दस्व जुजुषाणो अन्धसस्त्वष्टर्देवेभिर्जनिभिः सुमद्गणः ॥३॥**

हे यशस्वी मरुत्हरू हो ! हामीकहाँ आओ र कुशको आसनमा सुशोभित भएर बस। हे त्वष्टादेव ! तिमी देवगण तथा दैवी शक्तियुक्त सोमरस पान गरेर हर्षित होऊ।

**आ वक्षि देवाँ इह विप्र यक्षि चोशन्होतर्नि षदा योनिषु त्रिषु।**
**प्रति वीहि प्रस्थितं सोम्यं मधु पिबाग्नीध्रात्तव भागस्य तृप्णुहि ॥४॥**

हे मेधावी अग्निदेव ! हाम्रो यस यज्ञमा देवगणलाई सत्कारपूर्वक बोलाऊ। हे होता अग्निदेव ! हाम्रा यस यज्ञको कामनाले तिमी तीनै लोकमा प्रतिष्ठित होऊ। यस यज्ञमा शोधित सोम स्वीकार गरेर पान गर। समर्पित गरिएका भागले तिमी तृप्त होऊ।

**एष स्य ते तन्वो नृम्णवर्धनःसह ओजः प्रदिवि बाह्वोर्हितः।**
**तुभ्यं सुतो मघवन्तुभ्यमाभृतस्त्वमस्य ब्राह्मणादा तृपत्पिब ॥५॥**

हे इन्द्रदेव ! सोमरसले तिम्रा शरीरमा शक्ति वृद्धि गराउँछ। यस सोमरसले तिमी बाहुबल युक्त र तेजस्वी छौ। हे इन्द्रदेव ! तिम्रा लागि नै सोमरस ल्याएर प्रशोधन गरिएको हो। ज्ञानीहरूले प्रदान गरेको सोमरस पान गरेर सन्तुष्ट होऊ।

**जुषेथां यज्ञं बोधतं हवस्य मे सत्तो होता निविदः पूर्व्या अनु।**
**अच्छा राजाना नम एत्यावृतं प्रशास्त्रादा पिबतं सोम्यं मधु ॥६॥**

हे मित्रावरुण ! हाम्रो यज्ञमा आओ। होताहरूले उत्तम स्तोत्रले स्तुति गर्दछन्। हाम्रो आह्वान सुनेपछि यज्ञमा सुशोभित भई बस। हे देवताहरू हो ! याजकहरूले सोमरसमा दुध मिसाएर शोधन गरेको छन्। त्यसैले हाम्रा यज्ञमा आएर सोमरस पान गर।

[सूक्त - ३७]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - सविता। **छन्द** - त्रिष्टुप्।

**मन्दस्व होत्रादनु जोषमन्धसोऽध्वर्यवः स पूर्णां वष्ट्यासिचम्।**
**तस्मा एतं भरत तद्वशो ददिर्होत्रात्सोमं द्रविणोदः पिब ऋतुभिः ॥१॥**

हे धन प्रदाता अग्निदेव ! होताहरूले समर्पित गरेको सोमरस प्रसन्नतापूर्वक पान गरेर खुसी होऊ। हे अध्वर्युगण ! अग्निदेव पूर्णाहुतिको कामना गर्दछन्, त्यसैले उनलाई सोमरस प्रदान गर। सोमको कामना गर्ने अग्निदेव तिमीहरूलाई धन प्रदान गर्दछन्। हे अग्निदेव ! यज्ञमा होताहरूले समर्पित गरेको सोमरस ऋतुअनुसारले पान गर।

**यमु पूर्वमहुवे तमिदं हुवे सेदु हव्यो ददिर्यो नाम पत्यते।**
**अध्वर्युभिः प्रस्थितं सोम्यं मधु पोत्रात्सोमं द्रविणोदः पिब ऋतुभिः ॥२॥**

जुन अग्निदेवलाई हामीले पहिले बोलाएका थियौं, उनलाई अहिले पनि बोलाउँछौं। यी अग्निदेव

निश्चित नै याजकहरूलाई धन प्रदान गर्ने र आह्वान गर्न योग्य सबैका स्वामी हुन्। यी देवताका लागि याजकहरू सोमरस शोधित गर्दछन्। हे अग्निदेव ! यस पवित्र यज्ञमा ऋतुअनुसार सोमरस पान गर।

**मेद्यन्तु ते वह्नयो येभिरीयसेऽरिषण्यन्वीडयस्वा वनस्पते।**
**आयूया धृष्णो अभिगूर्या त्वं नेष्ट्रात्सोमं द्रविणोदः पिब ऋतुभिः ॥३॥**

हे द्रविणोदादेव ! तिमी जुन अश्वमा आरूढ हुन्छौ, त्यो तृप्त होस्। हे वनस्पतिदेव ! हामीलाई दुःख नदिईकन शक्तिशाली बनाऊ। हे शत्रुनाशक देवताहरू हो ! यज्ञमा आएर याज्ञिकहरूले समर्पित गरेको सोमरस ऋतुअनुसार पान गर।

**अपाद्धोत्रादुत पोत्रादमत्तोत नेष्ट्रादजुषत प्रयो हितम्।**
**तुरीयं पात्रममृक्तममर्त्यं द्रविणोदाः पिबतु द्राविणोदसः ॥४॥**

द्रविणोदादेव नेष्ट्राका यज्ञमा पवित्र सोमरस पान गरेर आनन्दित भए। उनै धन प्रदाता देवता राम्ररी प्रशोधन गरिएको, अमरत्व प्रदान गर्ने सोमरसको पान गरुन्।

**अर्वाञ्चमद्य यय्यं नृवाहणं रथं युञ्जाथामिह वां विमोचनम्।**
**पृङ्क्तं हवींषि मधुना हि कं गतमथा सोमं पिबतं वाजिनीवसू ॥५॥**

हे अश्विनीकुमारहरू हो ! आफ्नो अभीष्ट स्थानमा लैजाने द्रुतगामी रथलाई तिमीहरू हाम्रा यज्ञस्थलमा आउनका लागि तयार गराओ। यज्ञमा आएर यज्ञको सोमरसलाई स्वादिलो बनाओ। हे आश्रयदाता अश्विनीकुमार हो ! तिमीहरू सोमरस पान गर।

**जोष्यग्ने समिधं जोष्याहुतिं जोषि ब्रह्म जन्यं जोषि सुष्टुतिम्।**
**विश्वेभिर्विश्वाँ ऋतुना वसो मह उशन्देवाँ उशतः पायया हविः ॥६॥**

हे अग्निदेव ! हाम्रा समिधाबाट प्रदीप्त भएर आहुति ग्रहण गर र याजकले गरेको सुन्दर स्तुति स्वीकार गर। सोमपानको अभिलाषा गर्ने हे अग्निदेव ! तिमी सबैका आश्रयदाता हौ। सबै देवता, ऋभु र विश्वदेवहरूसँगै तिमी सोमरस पान गर।

[सूक्त - ३८]

**ऋषि** - गृत्समद भार्गव शौनक। **देवता** - सविता। **छन्द** - त्रिष्टुप्।

**उदु ष्य देवः सविता सवाय शश्वत्तमं तदपा वह्निरस्थात्।**
**नूनं देवेभ्यो वि हि धाति रत्नमथाभजद्वीतिहोत्रं स्वस्तौ ॥१॥**

सम्पूर्ण जगत्लाई धारण गर्ने, प्रकाशक तथा तेजस्वी सवितादेव सबैलाई कर्मको प्रेरणा दिँदै प्रतिदिन उदाउँछन्। देवत्व धारण गर्नेहरूका लागि सवितादेव रत्न धारण गर्दछन्। त्यसैले स्तोताहरू आफ्नो मङ्गलको कामना गर्दै यज्ञ गरुन्।

**विश्वस्य हि श्रुष्टये देव ऊर्ध्वः प्र बाहवा पृथुपाणिः सिसर्ति।**
**आपश्चिदस्य व्रत आ निमृग्रा अयं चिद्वातो रमते परिज्मन् ॥२॥**

तेजस्वी सवितादेव उदाएर सम्पूर्ण विश्वको सुखका लागि आफ्ना विशाल भुजा फिँजाउँछन्। सवितादेवको अनुशासनमा नै अत्यन्त पवित्र जल प्रवाहित हुन्छ र उनैका नियममा आबद्ध भएर नै आनन्दी वायु प्रवाहित हुन्छ।

**आशुभिश्चिद्यान्वि मुचाति नूनमरीरमदतमानं चिदेतोः।**
**अह्यर्षूणां चिन्न्ययाँ अविष्यामनु व्रतं सवितुर्मोक्यागात् ॥३॥**

अस्ताउँदै गरेका सवितादेवले आफ्नो द्रुतगामी रश्मि समेटेर हिँडेका यात्रीलाई रोक्छन्। शत्रुमाथि आक्रमण गर्ने वीरलाई रोक्छन्। उनको यो कर्म समाप्त भएपछि रात पर्छ।

**पुनः समव्यद्विततं वयन्ती मध्या कर्तोर्न्यधाच्छक्म धीरः।**
**उत्संहायास्थाद्व्यृतूँरदर्धररमतिः सविता देव आगात् ॥४॥**

अन्धकाररूपी रात्रि वस्त्र बुनेझैं सम्पूर्ण आकाश आवद्ध गर्दछिन्। ज्ञानीहरू गर्ने पर्ने काम पनि बीचैमा रोकिदिन्छन् र कहिल्यै नरोकिने ऋतुको विभाजन गर्ने सवितादेव उदाउनासाथ सम्पूर्ण संसारले निद्रा त्यागिदिन्छ।

नानौकांसि दुर्यो विश्वमायुर्वि तिष्ठते प्रभवः शोको अग्नेः।
ज्येष्ठं माता सूनवे भागमाधादन्वस्य केतमिषितं सवित्रा ॥५॥

घर र समस्त जीवनमै अग्निको तेज व्याप्त भएझैं सवितादेवको तेज सम्पूर्ण लोकमा व्याप्त छ। सवितादेवले प्रदान गरेको यज्ञको उत्तम भाग उषादेवी आफ्नो पुत्र अग्निका लागि धारण गर्दछिन्।

समाववर्ति विष्ठितो जिगीषुर्विश्वेषां कामश्चरताममाभूत्।
शश्वाँ अपो विकृतं हित्व्यागादनु व्रतं सवितुर्दैव्यस्य ॥६॥

गतिमान् सवितादेव अस्ताएपछि विजयको आशा गर्ने वीर योद्धाले आफ्नो आक्रमण रोकिदिन्छ। प्राणीहरू घरतिर फर्किने रहर गर्दछन् र निरन्तर कार्य गर्नेहरू पनि अपूरो काम बिसाएर घरतिर फर्कन्छन्।

त्वया हितमप्यमप्सु भागं धन्वान्वा मृगयसो वि तस्थुः।
वनानि विभ्यो नकिरस्य तानि व्रता देवस्य सवितुर्मिनन्ति ॥७॥

हे सवितादेव ! अन्तरिक्षमा तिमीले पानीको भाग स्थापित गरेका छौ, त्यो मरुभूमिका प्राणीले पनि पाऊन्। तिमीले नै पक्षीको आश्रयका लागि जङ्गल प्रदान गरेका छौ। सवितादेवका यस्ता तेजस्वी कर्म कसैले नष्ट गर्न सक्दैन।

याद्राध्यं१ वरुणो योनिमप्यमनिशितं निमिषि जर्भुराणः।
विश्वो मार्ताण्डो व्रजमा पशुर्गात्स्थशो जन्मानि सविता व्याकः ॥८॥

सवितादेव अस्ताएपछि निरन्तर गमनशील वरुणदेव सबैलाई सुखकारी र वाञ्छनीय आश्रय प्रदान गर्दछन्। यसै किसिमले सवितादेव अस्त हुनासाथ चरा र पशुहरू आआफ्ना थान्कोमा पुगेर छुट्टाछुट्टै बास बस्छन्।

न यस्येन्द्रो वरुणो न मित्रो व्रतमर्यमा न मिनन्ति रुद्रः।
नारातयस्तमिदं स्वस्ति हुवे देवं सवितारं नमोभिः ॥९॥

सवितादेवको अनुशासन इन्द्र, वरुण, मित्र, अर्यमा र रुद्रदेवले पनि भङ्ग गर्न सक्दैनन्, न त शत्रुले नै सक्दछन्। त्यस्ता तेजस्वी सवितादेवलाई हामी मङ्गल कामनाका साथ नमस्कार गर्दै आह्वान गर्दछौं।

भगं धियं वाजयन्तः पुरन्धिं नराशंसो ग्नास्पतिर्नो अव्याः।
आये वामस्य सङ्गथे रयीणां प्रिया देवस्य सवितुः स्याम ॥१०॥

सम्पूर्ण जगत् धारण गर्ने, सुखदाता, स्तुत्य, यजनीय, ज्ञानदाता र प्रजापालक सवितादेवले हामीलाई रक्षा गरून्। उत्तम ऐश्वर्य तथा पशु आदि सम्पदा प्राप्त भएपछि पनि हामी सवितादेवका प्रिय नै भइरहौं।

अस्मभ्यं तद्दिवो अद्भ्यः पृथिव्यास्त्वया दत्तं काम्यं राध आ गात्।
शं यत्स्तोतृभ्य आपये भवात्युरुशंसाय सवितर्जरित्रे ॥११॥

हे सवितादेव ! तिमीबाट प्रदान गरिएको ऐश्वर्य स्तोताहरू र उनका वंशजहरूका लागि कल्याणकारी छ, त्यसैले द्युलोक, भूलोक र अन्तरिक्षलोकलाई कान्तियुक्त ऐश्वर्य प्रदान गर। हामी तिम्रो स्तुति गर्दछौं।

[सूक्त - ३९]

ऋषि - गृत्समद भार्गव शौनक। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

ग्रावाणेव तदिदर्थं जरेथे गृध्रेव वृक्षं निधिमन्तमच्छ।
ब्रह्मणेव विदथ उक्थशासा दूतेव हव्या जन्या पुरुत्रा ॥१॥

हे अश्विनीकुमारहरू हो ! लटरम्म फल भएका रुखतिर पक्षी गएझैं यजमानकहाँ पुग। दुई ढुङ्गाबाट निस्केको ध्वनिजस्तै शब्द गर्दै शत्रुमाथि बाधा पार। यज्ञका ब्रह्मा र जनताका हितकारी दूतहरूजस्ता तिमीहरू धेरैबाट सम्मानपूर्वक बोलाइने योग्य छौ।

प्रातर्यावाणा रथ्येव वीराजेव यमा वरमा सचेथे।
मेने इव तन्वा३ शुम्भमाने दम्पतीव क्रतुविदा जनेषु ॥२॥

हे अश्विनीकुमारहरू हो ! बिहान भ्रमण गर्ने दुई जुम्ल्याहा वीर रथीझैं छौ। दुई वटी आइमाईझैं सुन्दर शरीर भएका छौ। पतिपत्नीझैं एकापसमा सम्बद्ध रहेर कार्य गर्दछौ। तिमीहरू आफ्ना असल भक्तकहाँ जान्छौ।

शृङ्गेव नः प्रथमा गन्तमर्वाच्छफाविव जर्भुराणा तरोभिः।
चक्रवाकेव प्रति वस्तोरुस्रार्वाञ्चा यातं रथ्येव शक्रा ॥३॥

हे अश्विनीकुमारहरू हो ! सिङजस्तो अगुवा र खुरजस्तो गतिशील भएर तिमीहरू हाम्रा नजिकै आओ। आफ्ना कर्ममा समर्थ, शत्रुनाशक हे अश्विनीकुमारहरू हो ! चखेवाको जोडी वा इन्द्रका दुई महारथी आएझैं तिमीहरू हामीकहाँ आओ।

नावेव नः पारयत. युगेव नभ्येव न उपधीव प्रधीव।
श्वानेव नो अरिषण्या तनूनां खृगलेव विस्रसः पातमस्मान् ॥४॥

हे अश्विनीकुमारहरू हो ! नौकाझैं, रथमा नारेका अश्वझैं, रथका पाङ्ग्राको धुराझैं, रथका दुई छेउमा लगाइएका फलामे डन्डीझैं र रथमा लगाइएका दुई पाङ्ग्राका हलझैं हामीलाई आपद्बाट पार लगाओ। दायाँबायाँ हिँडेका दुई कुत्ता (कुकुर वा पाङ्ग्राको एक भागविशेष) र कवचजस्तै रक्षक भएर हामीलाई विनाशबाट जोगाओ।

वातेवाजुर्या नद्येव रीतिरक्षी इव चक्षुषा यातमर्वाक्।
हस्ताविव तन्वे३शम्भविष्ठा पादेव नो नयतं वस्यो अच्छ ॥५॥

हे अश्विनीकुमारहरू हो ! वायुझैं पुरानो नहुने, नदीझैं गतिमान् र दुई आँखाझैं दर्शनशक्तिले युक्त भएर तिमीहरू दुवै हामीसमक्ष आओ। तिमीहरू दुवै शरीरका लागि हातगोडाजत्तिकै सुखदायी हौ। गोडाझैं भएर हामीलाई सजिलो मार्गमा हिँडाओ।

ओष्ठाविव मध्वास्ने वदन्ता स्तनाविव पिप्यतं जीवसे नः।
नासेव नस्तन्वो रक्षितारा कर्णाविव सुश्रुता भूतमस्मे ॥६॥

हे अश्विनीकुमारहरू हो ! मुखको ओठजस्तै प्रिय वचन बोल्ने तिमीहरू दुवै स्तनपान गर्ने बालक पुष्ट भएझैं हाम्रो जीवन उन्नतिका लागि पुष्ट गराओ। तिमीहरू दुवै नाकझैं शरीरको संरक्षण गर्ने र कानझैं असल कुरो सुन्ने बन।

हस्तेव शक्तिमभि सन्ददी नः क्षामेव नः समजतं रजांसि।
इमा गिरो अश्विना युष्मयन्तीः क्ष्णोत्रेणेव स्वधितिं सं शिशीतम् ॥७॥

हे अश्विनीकुमारहरू हो ! हामीलाई हातले झैं शक्ति र सामर्थ्य प्रदान गर। द्युलोक र पृथ्वीलाई राम्रो आश्रय प्रदान गर। हे अश्विनीकुमारहरू हो ! सान लगाएर तरवार धारिलो बनाएझैं हाम्रा स्तुतिले तिमीहरूलाई अत्यन्तै प्रभावशाली बनाओस्।

एतानि वामश्विना वर्धनानि ब्रह्म स्तोमं गृत्समदासो अक्रन्।
तानि नरा जुजुषाणोप यातं बृहद्वदेम विदथे सुवीराः ॥८॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरूको कीर्ति विस्तार गर्नका लागि गृत्समद ऋषिले ज्ञानदायी स्तोत्र बनाएका छन्। तिमीहरू नेतृत्व प्रदान गर्दछौ। त्यही स्तोत्र स्वीकार गर्दै हामीकहाँ आओ। सुसन्ततियुक्त भएर हामी यज्ञमा तिमीहरूका यशको गान गर्दछौं।

[सूक्त – ४०]

ऋषि – गृत्समद भार्गवशौनक। देवता – सोमापूषा अदिति। छन्द – त्रिष्टुप्।

सोमापूषणा जनना रयीणां जनना दिवो जनना पृथिव्याः।
जातौ विश्वस्य भुवनस्य गोपौ देवा अकृण्वन्नमृतस्य नाभिम् ॥१॥

हे सोमदेव तथा पूषादेव ! तिमीहरू दुवै द्युलोक र पृथिवीलोकका ऐश्वर्य उत्पादक हौ। तिमीहरू जन्मनासाथ समस्त संसारका संरक्षक भयौ र देवताहरूले पनि तिमीहरूलाई नै अमृतको केन्द्र बनाए।

इमौ देवौ जायमानौ जुषन्तेमौ तमांसि गूहतामजुष्टा।
आभ्यामिन्द्रः पक्वमामास्वन्तः सोमापूषभ्यां जनदुस्रियासु ॥२॥

यी दुवैको सेवा गर्न लागे। यी दुवै देवताहरू सोमदेव र पूषादेवले जन्म लिनासाथ सबै देवताहरू यी दुवैको सेवा गर्न लागे। यी दुवै देवताहरू अप्रिय अन्धकारलाई नष्ट गर्दछन्। इन्द्रदेवले सोम तथा पूषादेवका मद्दतले कोरली गाईमा मिठो दुध उत्पन्न गराए।

**सोमापूषणा रजसो विमानं सप्तचक्रं रथमविश्वमिन्वम्।**
**विषूवृतं मनसा युज्यमानं तं जिन्वथो वृषणा पञ्चरश्मिम् ॥३॥**

हे सोम तथा पूषादेव ! तिमीहरू सिङ्गो संसार उत्पन्न गराउने, सर्वव्यापी, समस्त संसारका रक्षक हौ। सात ऋतुरूपी चक्रले युक्त, इच्छाअनुसार चल्ने, पाँच लगाम भएको रथ हामीतिर प्रेरित गर।

**दिव्यन्यः सदनं चक्र उच्चा पृथिव्यामन्यो अध्यन्तरिक्षे।**
**तावस्मभ्यं पुरुवारं पुरुक्षुं रायस्पोषं वि ष्यतां नाभिमस्मे ॥४॥**

तिमीहरूमध्येको एउटा उच्च द्युलोकमा रहन्छौ अनि अर्कोचाहिँ अन्तरिक्ष र पृथिवीमा रहन्छौ। तिमीहरू दुवै देवताले हाम्रा लागि स्वीकार्य, धेरै किसिमका अन्न आदिले पूर्ण पुष्टिकारक ऐश्वर्य र पशुधन प्रदान गर।

**विश्वान्यन्यो भुवना जजान विश्वमन्यो अभिचक्षाण एति।**
**सोमापूषणाववतं धियं मे युवाभ्यां विश्वाः पृतना जयेम ॥५॥**

हे सोम र पूषादेवहरू हो ! तिमीहरूमध्ये एउटाले संसार उत्पत्ति गर्‍यौ र अर्का देवले सम्पूर्ण संसारको पर्यवेक्षण गर्दछौ। हे सोम र पूषादेव हो ! हामीलाई सद्बुद्धि प्रदान गर्दै हाम्रा कर्मको रक्षा गर। तिमीहरूका सहयाताले हामी शत्रुसेनालाई जितौँ।

**धियं पूषा जिन्वतु विश्वमिन्वो रयिं सोमो रयिपतिर्दधातु।**
**अवतु देव्यदितिरनर्वा बृहद्वदेम विदथे सुवीराः ॥६॥**

सारा विश्वलाई नै सन्तुष्ट गराउने पूषादेवले हाम्रो बुद्धि सन्मार्गगामी बनाऊन्। ऐश्वर्यका धनी सोमदेवले हामीलाई धन प्रदान गरुन्। अनुकूल व्यवहार गर्ने देवमाता अदितिले रक्षा गरुन् र हामी सुसन्ततियुक्त भएर यज्ञमा तिमीहरूको यशोगान गरौं।

## [सूक्त - ४१]

**ऋषि** – गृत्समद भार्गव शौनक। **देवता** – इन्द्रवायू अग्नि। **छन्द** – गायत्री वृहती।

**वायो ये ते सहस्रिणो रथासस्तेभिरा गहि। नियुत्वान्त्सोमपीतये ॥१॥**

हे वायुदेव ! आफ्ना सयौँ घोडायुक्त हजारौँ रथबाट सोमपान गर्नका लागि आऊ।

**नियुत्वान्वायवा गह्ययं शुक्रो अयामि ते। गन्तासि सुन्वतो गृहम् ॥२॥**

रथमा जोतिएका घोडामा सवार भएर याज्ञिककहाँ पुग्ने हे वायुदेव ! तिम्रा लागि यो गतिलो सोमरस तयार गरिएको छ। यसै निम्ति हामी तिमीलाई आह्वान गर्दछौं।

**शुक्रस्याद्य गवाशिर इन्द्रवायू नियुत्वतः। आ यातं पिबतं नरा ॥३॥**

हे नेतृत्व प्रदान गर्ने इन्द्र र वायुदेव हो ! तिमीहरू आज घोडामा गाईको दुध मिसिएको तेजस्वी सोमरस पान गर्नका लागि आओ र पान गर।

**अयं वां मित्रावरुणा सुतः सोम ऋतावृधा। ममेदिह श्रुतं हवम् ॥४॥**

यज्ञको उन्नति गराउने हे मित्र र वरुणदेवहरू हो ! उत्तम रीतिले तयार र शुद्ध गरिएको यो सोमरस तिमीहरूकै लागि प्रस्तुत छ। हाम्रो प्रार्थना सुन।

**राजानावनभिद्रुहा ध्रुवे सदस्युत्तमे। सहस्रस्थूण आसाते ॥५॥**

आपसमा कहिल्यै द्रोह नगर्ने हे तेजस्वी मित्र र वरुणदेवहरू हो ! हजार खम्बामा स्थिर, सशक्त र उत्तम यस यज्ञमण्डपमा तिमीहरू विराजमान होओ।

**ता सम्राजा घृतासुती आदित्या दानुनस्पती। सचेते अनवह्वरम् ॥६॥**

राजाको रूपमा रहेका, घिउको आहुति स्वीकार गर्ने, दानशील, अदितिपुत्र मित्र र वरुणदेव कुटिलतारहित साधकहरूलाई सहायता गर्दछन्।

**गोमद् षु नासत्याश्वावद्यातमश्विना। वर्ती रुद्रा नृपाय्यम् ॥७॥**

हे अश्विनीकुमारहरू हो ! हे सत्यका सेवक रुद्रदेवहरू हो ! यज्ञमा नेतृत्व गर्नेहरूले सोमरसको पान गर्दछन्। त्यही सोमरस गाई तथा अश्वले युक्त रथमा तिमीहरू मनग्गे लिएर आओ।

**न यत्परो नान्तर आदधर्षद्वृषण्वसू। दुःशंसो मर्त्यो रिपुः ॥८॥**

हे धनको वर्षा गराउने अश्विनीकुमारहरू हो ! नजिकटाढा जहाँसुकैका कटुभाषी शत्रुले चोर्न नसक्ने धन हामीलाई प्रदान गर।

ता न आ वोळ्हमश्विना रयिं पिशङ्गसन्दृशम्। धिष्ण्या वरिवोविदम् ॥९॥
हे उत्तम स्तुति गर्न योग्य अश्विनीकुमारहरू हो ! तिमीहरूसित भएको सुनको ऐश्वर्य हामीलाई ल्याइदेऊ।

इन्द्रो अङ्ग महद्भयमभी षदप चुच्यवत्। स हि स्थिरो विचर्षणिः ॥१०॥
युद्धकुशल विश्वद्रष्टा इन्द्रदेवले ठूलो पराजय होला भन्ने डर तुरुन्तै मेटाइदिन्छन्।

इन्द्रश्च मृळयाति नो न नः पश्चादघं नशत्। भद्रं भवाति नः पुरः ॥११॥
इन्द्रदेवले सुख प्रदान गरे भने पापले हामीलाई नाश गर्न सक्दैन। उनी हरेक किसिमले हाम्रो भलो नै गर्दछन्।

इन्द्र आशाभ्यस्परि सर्वाभ्यो अभयं करत्। जेता शत्रून्विचर्षणिः ॥१२॥
शत्रुविजेता, ज्ञानसम्पन्न इन्द्रदेवले सबै तिरबाट हामीलाई ढुक्क बनाइदिऊन्।

विश्वे देवास आ गत शृणुता म इमं हवम्। एदं बर्हिर्नि षीदत ॥१३॥
हे सम्पूर्ण देवताहरू हो ! तिमीहरू यस यज्ञमा आएर कुशका आसनमा बस र हाम्रो यो प्रार्थना सुन।

तीव्रो वो मधुमाँ अयं शुनहोत्रेषु मत्सरः। एतं पिबत काम्यम् ॥१४॥
हे सम्पूर्ण देवताहरू हो ! पवित्रता प्रदान गर्ने यस यज्ञमा आनन्ददायी, कडा र मिठो सोमरस तिमीहरूका लागि तयार गरिएको छ। तिमीहरू सबै आओ र इच्छाअनुसार सोमरस पान गर।

इन्द्रज्येष्ठा मरुद्गणा देवासः पूषरातयः। विश्वे मम श्रुता हवम् ॥१५॥
मरुत्समूहको नेता इन्द्रदेव हुन् र त्यस समूहका पोषक पूषादेव हुन्। मरुत्गणले हाम्रो प्रार्थना स्वीकार गरुन्।

अम्बितमे नदीतमे देवितमे सरस्वति।
अप्रशस्ता इव स्मसि प्रशस्तिमम्ब नस्कृधि ॥१६॥
हे नदी, मातृगण र देवताहरूमा श्रेष्ठ माता सरस्वती ! हामी मूर्ख बालकजस्तै छौं। त्यसैले हामीलाई असल ज्ञान प्रदान गर।

त्वे विश्वा सरस्वति श्रितायूंषि देव्याम्।
शुनहोत्रेषु मत्स्व प्रजां देवि दिदिड्ढि नः ॥१७॥
हे माता सरस्वती ! तिम्रो तेजस्वी आश्रयले सम्पूर्ण जीवन सुखमा छ, त्यसैले हे माता ! पवित्रता प्रदान गर्ने यस यज्ञमा आनन्दित भएर हामीलाई असल सन्तान प्रदान गर।

इमा ब्रह्म सरस्वति जुषस्व वाजिनीवति।
या ते मन्म गृत्समदा ऋतावरि प्रिया देवेषु जुह्वति ॥१८॥
हे माता सरस्वती ! अन्न र बल प्रदान गरेर तिमी सन्मार्गमा चल्दछ्यौ। देवतालाई प्रिय लाग्ने गृत्समद ऋषिले बनाएको उत्तम स्तोत्र हामी सुनाउँछौं, तिमी स्वीकार गर।

प्रेतां यज्ञस्य शम्भुवा युवामिदा वृणीमहे। अग्निं च हव्यवाहनम् ॥१९॥
हे मङ्गलकारिणी द्यावापृथ्वीदेवीहरू हो ! हव्यवाहक अग्निदेवका साथ तिमीहरू दुवैलाई हामी वरण गर्दछौं। तिमीहरू हाम्रो प्रार्थना स्वीकार गरेर यज्ञमा आओ।

द्यावा नः पृथिवी इमं सिध्रमद्य दिविस्पृशम्। यज्ञं देवेषु यच्छताम् ॥२०॥
हे द्यावापृथ्वीदेवी हो ! सुखको साधन र आकाश स्पर्श गर्ने हाम्रा यज्ञको हवि आज तिमीहरू दुवैले देवलोकसम्म लगिदेओ।

आ वामुपस्थमद्रुहा देवाः सीदन्तु यज्ञियाः। इहाद्य सोमपीतये ॥२१॥
आपसमा द्रोह नगरीकन रहने हे द्यावापृथ्वीदेवी हो ! आज यस यज्ञमा सोमपान गर्नका निम्ति देवगण तिमीहरूसँगै बसून्।

[सूक्त - ४२]

ऋषि - गृत्समद भार्गवशौनक। देवता - शकुन्त। छन्द - त्रिष्टुप्।

कनिक्रदज्जनुषं प्रब्रुवाण इयर्ति वाचमरितेव नावम्।
सुमङ्गलश्च शकुने भवासि मा त्वा का चिदभिभा विश्व्या विदत् ॥१॥
माझीले नौका चलाएझैं उपदेश दिने चराहरू बारम्बार उत्तम वाणीले प्रेरित गर्दछन्। हे शकुनि हो ! तिमीहरू सबैको भलो गर्ने हौ। तिमीहरूलाई कुनै पनि आक्रमणकारी शत्रुले कुनै खालको पनि दुःख नदियोस्।

**मा त्वा श्येन उद्वधीन्मा सुपर्णो मा त्वा विददिषुमान्वीरो अस्ता।**
**पित्र्यामनु प्रदिशं कनिक्रदत्सुमङ्गलो भद्रवादी वदेह॥२॥**

हे चराहरू हो ! तिमीहरूलाई दुष्ट श्येनले र बलशाली गरुडले नमारुन्। कुनै हतियारधारीले तिमीहरूलाई फेला नपारुन्। यहाँभन्दा दक्षिणतर्फ पनि कल्याणकारी वचन नै उच्चारण गर।

**अव क्रन्द दक्षिणतो गृहाणां सुमङ्गलो भद्रवादी शकुन्ते।**
**मा नः स्तेन ईशत माघशंसो बृहद्वदेम विदथे सुवीराः॥३॥**

हे चराहरू हो ! तिमीहरू मङ्गल शव्दले गाउँछौ। त्यसैले घरका दक्षिण दिशामा बस्दा पनि कल्याणकारी र प्रिय वचन नै बोल। चोर र दुष्ट व्यक्तिले हामीमाथि अधिकार नगरुन्। असल सन्तानयुक्त भई हामी यस यज्ञमा तिमीहरूको प्रशंसा गरौं।

## [सूक्त – ४३]

**ऋषि** – गृत्समद भार्गव शौनक। **देवता** – शकुन्त। **छन्द** – जगती अतिशक्वरी अष्टि।

**प्रदक्षिणिदभि गृणन्ति कारवो वयो वदन्त ऋतुथा शकुन्तयः।**
**उभे वाचौ वदति सामगा इव गायत्रं च त्रैष्टुभं चानु राजति॥१॥**

बेलावखत अन्न खोजी गर्ने शकुनिसमूहले स्तोताभैं दाहिनेतर्फ बसेर उपदेश दिऊन्। साम गायकले गायत्री र त्रिष्टुप् दुवै छन्दको वाणी उच्चारण गरेभैं शकुनिहरुले उत्तम बोली बोल्दा रमाइलो लाग्छ।

**उद्गातेव शकुने साम गायसि ब्रह्मपुत्र इव सवनेषु शंससि। वृषेव वाजी शिशुमतीरपीत्या सर्वतो नः शकुने भद्रमा वद विश्वतो नः शकुने पुण्यमा वद।**

हे चराहरू हो ! तिमीहरू उद्गाताले सामगान गाएभैं र यज्ञमा ऋत्विक्ले स्तोत्र उच्चारण गरेभैं गर्दछौ। घोडीका नजिक बलियो घोडा गएर हिल्लिएभैं हे शकुनि ! तिमी चारैतिर हाम्रा लागि कल्याणकारक तथा पुण्यदायक वचन नै बोल।

**आवदंस्त्वं शकुने भद्रमा वद तूष्णीमासीनः सुमतिं चिकिद्धि नः।**
**यदुत्पतन्वदसि कर्करिर्यथा बृहद्वदेम विदथे सुवीराः॥३॥**

हे चराहरू हो ! तिमी जुन बेला बोल्दछौ, त्यस बेला हाम्रो कल्याणको सङ्केत गर्दछौ। तिमी शान्त रहेका बेला हाम्रो बुद्धि सनमार्गमा प्रेरित गर्दछौ। उडिरहेका बेलामा कर्करीभैं मधुर ध्वनि निकाल्दछौ। हामी सुसन्ततियुक्त भएर यस यज्ञमा तिमीलाई यशोगान गर्दछौं।

**॥इति द्वितीयं मण्डलम्॥**

दोस्रो मण्डल सकियो

ॐ
ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ तृतीयं मण्डलम्॥

॥तेस्रो मण्डल॥

### [सूक्त - १]

ऋषि - विश्वामित्र। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**सोमस्य मा तवसं वक्ष्यग्ने वह्निं चकर्थ विदथे यजध्यै।**
**देवाँ अच्छा दीद्यद्युञ्जे अद्रिं शमाये अग्ने तन्वं जुषस्व ॥१॥**

हे अग्निदेव ! तिमीले यज्ञका काममा हामीलाई सोमरसवाहक बनाएका छौं, त्यसैले बल पनि प्रदान गर। हे अग्निदेव ! हामी तेजसम्पन्न देवशक्तिको सेवाका लागि ढुङ्गा मिलाएर तिम्रो स्तुति गर्दछौं। शरीर बलियो पार्नका लागि तिमी सोम ग्रहण गर।

**प्राञ्चं यज्ञं चकृम वर्धतां गीः समिद्भिरग्निं नमसा दुवस्यन्।**
**दिवः शशासुर्विदथा कवीनां गृत्साय चित्तवसे गातुमीषुः ॥२॥**

हे अग्निदेव ! समिधा र हव्य आदिले तिमीलाई बलियो बनाउँदै हामीले यज्ञ सम्पन्न गरेका छौं। हाम्रा बोलीको विकास होस्। देवताहरूले हामी स्तोतालाई यज्ञ आदि कर्म सिकाएका छन्। त्यसैले हामी स्तोताहरू अग्निदेवलाई स्तुति गर्ने रहर गर्दछौं।

**मयो दधे मेधिरः पूतदक्षो दिवः सुबन्धुर्जनुषा पृथिव्याः।**
**अविन्दन्नु दर्शतमप्स्व१ न्तर्देवासो अग्निमपसि स्वसॄणाम् ॥३॥**

अग्निदेव मेधावी, विशुद्ध, बलसम्पन्न र जन्मदेखि नै असल बन्धुत्वभावले युक्त छन्। द्युलोक र पृथ्वीलोकमा सर्वत्र सुख प्रदान गर्दछन्। प्रवाहमान धारा भएका जलमा गुप्त रूपले रहेका दर्शनीय अग्निदेवलाई देवताहरूले यज्ञका लागि खोजेर निकाले।

**अवर्धयन्त्सुभगं सप्त यह्वीः श्वेतं जज्ञानमरुषं महित्वा।**
**शिशुं न जातमभ्यारुरश्वा देवासो अग्निं जनिमन्वपुष्यन् ॥४॥**

स्वच्छ धनसम्पत्तिले सम्पन्न भएर उत्पन्न अग्निदेवलाई प्रवाहशील महान् नदीले बढाए। घोडीले लैनो बछेडो हुर्काएझैं अग्नि उत्पन्न भएपछि देवताहरूले हुर्काईबढाई गरे।

**शुक्रेभिरङ्गै रज आततन्वान् क्रतुं पुनानः कविभिः पवित्रैः।**
**शोचिर्वसानः पर्यायुरपां श्रियो मिमीते बृहतीरनूनाः ॥५॥**

स्वच्छ तेजले अन्तरिक्ष व्याप्त गरेर यज्ञ सम्पादक अग्निदेव यजमानलाई पवित्र र स्तुत्य तेजले विशेष शुद्ध गर्दछन्। प्रदीप्त ज्वालारूपी बर्को ओढेका अग्निदेव स्तोताहरूलाई मनग्गे अन्न र चाहिएजति ऐश्वर्ययुक्त सम्पदा दिने गर्दछन्।

**वव्राजा सीमनदतीरदब्धा दिवो यह्वीरवसाना अनग्नाः।**
**सना अत्र युवतयः सयोनीरेकं गर्भं दधिरे सप्त वाणीः ॥६॥**

आफैं ननासिने र हानी पनि नगर्ने खालका अग्निदेव सबैतिर डुल्दछन्। बर्को नओढे पनि नाङ्गो नदेखिने, सधैं तन्नेरी, एउटै दिव्य स्रोतबाट उत्पन्न, एउटै अग्निरूपी गर्भलाई प्रवाहमान जलका सबै धाराहरूले बोकेका छन्।

**स्तीर्णा अस्य संहतो विश्वरूपा घृतस्य योनौ स्रवथे मधूनाम्।**
**अस्थुरत्र धेनवः पिन्वमाना मही दस्मस्य मातरा समीची ॥७॥**

अग्निका नाना रूपका सङ्गठित किरणहरू फिँजिएछि पोषक रस उत्पन्न हुने स्थानबाट मधुर वर्षा हुन्छ। सबैलाई सन्तुष्ट गराउने किरण यहीं रहन्छन्। अग्निका मातापिताका रूपमा पृथ्वी र अन्तरिक्ष रहेका छन्।

बभ्राणः सूनो सहसो व्यद्यौद्दधानः शुक्रा रभसा वपूंषि ।
श्चोतन्ति धारा मधुनो घृतस्य वृषा यत्र वावृधे काव्येन ॥८॥

हे बलका पुत्र अग्निदेव ! सबैबाट धारण गरिने खालका तिमी उज्यालो र वेगवान् किरणले प्रकाशमान् छौ। स्तोताहरूले स्तोत्रद्वारा तिमीलाई हुर्काउँदा जलधाराझैं मिठो घिउका पुष्टिकारक धारा बर्साउँदै नुहाइदिन्छन्।

पितुश्चिदूधर्जनुषा विवेद व्यस्य धारा असृजद्वि धेनाः ।
गुहा चरन्तं सखिभिः शिवेभिर्दिवो यह्वीभिर्न गुहा बभूव ॥९॥

जन्मँदा साथ पिताभन्दा तल्लो तहमा रहेको जल प्रदेशलाई अग्निले चिने। अन्तरिक्षका जलधाराले विद्युत् उत्पन्न गरे। अग्निदेव कल्याणकारी मित्र र द्युलोकको जलराशिसँग गोप्य रूपले विचरण गर्दछन्। त्यस बेला अग्निलाई कसैले देख्तैन।

पितुश्च गर्भं जनितुश्च बभ्रे पूर्वीरेको अधयत्पीप्यानाः ।
वृष्णे सपत्नी शुचये सबन्धू उभे अस्मै मनुष्ये३ नि पाहि ॥१०॥

अग्निदेव पिताको काख र माताका गर्भमा हुर्कन्छन्। अग्निदेव केवल औषधि खाएर बढ्दछन्। चाहिएको कुरो वर्षा गराउने अग्निदेव पत्नीसहित याजकलाई चोख्याउने आफन्तजस्तै छन्। हे अग्निदेव ! द्यावापृथिवीमा हामी यजमानलाई रक्षा गर।

उरौ महाँ अनिबाधे ववर्धापो अग्निं यशसः सं हि पूर्वीः ।
ऋतस्य योनावशयद्दमूना जामीनामग्निरपसि स्वसॄणाम् ॥११॥

महान् अग्निदेव निर्बाध र विस्तृत पृथ्वीमा बढ्दछन्। त्यहाँ अन्न कमाउने जल समूहले अग्निलाई बढाउँछ। जलको उत्पत्तिस्थानमा रहेका अग्निदेव दिदीबहिनीजस्ता नदीका जलभित्र शान्तिपूर्वक सुतेका हुन्छन्।

अक्रो न बभ्रिः समिथे महीनां दिदृक्षेयः सूनवे भाऋजीकः ।
उदुस्त्रिया जनिता यो जजानापां गर्भो नृतमो यह्वो अग्निः ॥१२॥

अग्निदेव सबैका पिताजस्ता जलका गर्भमा गोप्य रूपले बस्ने, मानिसका हितकारी, रणकुशल, आफ्नो सेना पोस्ने, सबैलाई राम्रो लाग्ने र तेजले उज्यालो छन्। उनले पुत्रका रूपमा यजमानलाई पोस्ने क्षमता उत्पन्न गरेका छन्।

अपां गर्भं दर्शतमोषधीनां वना जजान सुभगा विरूपम् ।
देवासश्चिन्मनसा सं हि जग्मुः पनिष्ठं जातं तवसं दुवस्यन् ॥१३॥

उत्तम ऐश्वर्ययुक्त मदानीले हेर्नमा राम्रा, विशिष्ट रूपका, जल र औषधिका गर्भमा रहने अग्निदेव उत्पन्न गरायो। सम्पूर्ण देवताहरू स्तुत्य, बलशाली र भर्खर जन्मेका अग्निका नजिक स्तुति गर्दै पुगे। उनीहरूले अग्निको राम्रो स्याहार गरे।

बृहन्त इद्भानवो भाऋजीकमग्निं सचन्त विद्युतो न शुक्राः ।
गुहेव वृद्धं सदसि स्वे अन्तरपार ऊर्वे अमृतं दुहानाः ॥१४॥

बिजुलीजस्तो कान्ति भएका, महान् सूर्यदेवको किरणले अथाह समुद्रबाट अमृतरूपी जल दोहन गर्दछन्। गुफाजस्तो गोप्य अन्तरिक्षरूपी घरमा हुर्कने, प्रभासम्पन्न अग्निको आश्रय त्यस जलले प्राप्त गर्दछ।

ईडे च त्वा यजमानो हविर्भिरीडे सखित्वं सुमतिं निकामः ।
देवैरवो मिमीहि सं जरित्रे रक्षा च नो दम्येभिरनीकैः ॥१५॥

हे अग्निदेव ! हामी यजमानहरू हव्य आदिले तिम्रो स्तुति राम्ररी गर्दछौं। हामी उत्तम बुद्धिको खोजी गर्दै तिमीसित मित्रता गर्नका लागि बिन्ती गर्दछौं। तिमी देवताहरूका साथमा हामी स्तुति गर्नेहरूको रक्षा गर र दुष्टबाट हामीलाई जोगाऊ।

उपक्षेतारस्तव सुप्रणीतेऽग्ने विश्वानि धन्या दधानाः ।
सुरेतसा श्रवसा तुञ्जमाना अभि ष्याम पृतनायूँरदेवान् ॥१६॥

हे असल नियममा चल्ने अग्निदेव ! तिम्रा आश्रयमा रहने हामीहरू सबै खालका धनले सम्पन्न हुँदै, तिम्रो कृपाले दरिला हुन्छौं। हामी असल पोसिलो अन्नले सम्पन्न भएर देवताविरोधी शत्रुलाई पराजित गर्न सकौं।

आ देवानामभवः केतुरग्ने मन्द्रो विश्वानि काव्यानि विद्वान्।
प्रति मर्तां अवासयो दमूना अनु देवान्रथिरो यासि साधन् ॥१७॥

हे अग्निदेव ! तिमी देवकार्यका प्रतीकका रूपमा अत्यन्त सुन्दर देखिन्छौ। तिमी सम्पूर्ण स्तोत्रका ज्ञाता हौ। मानिसलाई तिमी आफ्ना घरमा आश्रय दिन्छौ। राम्रो रथमा यात्रा गर्ने तिमी देवताहरूका कार्यको अनुसरण गर्दछौ।

नि दुरोणे अमृतो मर्त्यानां राजा ससाद विदथानि साधन्।
घृतप्रतीक उर्विया व्यद्यौदग्निर्विश्वानि काव्यानि विद्वान् ॥१८॥

अविनाशी र दीप्तिमान् अग्निदेव यज्ञका साधनको रूपमा प्रयुक्त हुन्छन् र मानिसका घरमा रहन्छन्। उनी सम्पूर्ण स्तोत्रका ज्ञाता हुन्। घिउले उजिल्याइएका अग्निदेवको शरीर विशेष राम्रो देखिन्छ।

आ नो गहि सख्येभिः शिवेभिर्महान्महीभिरूतिभिः सरण्यन्।
अस्मे रयिं बहुलं सन्तरुत्रं सुवाचं भागं यशसं कृधी नः ॥१९॥

हे सबैतिर घुम्न सक्ने, महान् अग्निदेव ! तिमी आफ्नो मङ्गलदायी मैत्री र रक्षण सामर्थ्यका साथ हामीकहाँ आऊ। हामीलाई आपद्रहित, उत्तम स्तुति गर्न सक्ने र यशस्वी धन मनग्गे मात्रामा प्रदान गर।

एता ते अग्ने जनिमा सनानि प्र पूर्व्याय नूतनानि वोचम्।
महान्ति वृष्णे सवना कृतेमा जन्मञ्जन्मन् निहितो जातवेदाः ॥२०॥

हे अग्निदेव ! सनातन र नयाँ स्तोत्रले पुराना पुरुषका रूपमा तिम्रो स्तुति गरिन्छ। जन्म लिने सबै प्राणीहरूसित रहने हे शक्तिशाली अग्निदेव ! तिम्रा निमित्त हामीले महान् यज्ञ सम्पन्न गरेका छौँ।

जन्मञ्जन्मन् निहितो जातवेदा विश्वामित्रेभिरिध्यते अजस्रः।
तस्य वयं सुमतौ यज्ञियस्यापि भद्रे सौमनसे स्याम ॥२१॥

सबै प्राणीभित्र रहने, सबै प्राणीलाई चिन्ने, अग्निदेवलाई विश्वामित्रका वंशजले सधैँ प्रदीप्त गर्दछन्। हामी यजनीय अग्निदेवका हितकारी कृपाको अनुसरण गरौँ।

इमं यज्ञं सहसावन् त्वं नो देवत्रा धेहि सुक्रतो रराणः।
प्र यंसि होतर्बृहतीरिषो नोऽग्ने महि द्रविणमा यजस्व ॥२२॥

हे बलशाली र उत्तम कर्म भएका अग्निदेव ! हाम्रो हव्यले खुसी भएर हाम्रो यज्ञ सबै देवताकहाँ पुऱ्याइदेऊ। हे देवताहरूलाई बोलाइदिने अग्निदेव ! हामीलाई मनग्गे अन्न आदि प्रदान गर। हामीलाई अकुत धनले सम्पन्न गराऊ।

इडामग्ने पुरुदंसं सनिं गोः शश्वत्तमं हवमानाय साध।
स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥२३॥

हे अग्निदेव ! यज्ञ आदि कार्यका लागि, अनेकौँ सत्कर्मका लागि र गाईको स्याहारका लागि उचित भूमि हामीलाई प्रदान गर। हाम्रा पुत्रले सन्तान बढाऊन्। तिम्रो सद्बुद्धि हामीलाई पनि प्राप्त होस्।

[सूक्त - २]

**ऋषि** - विश्वामित्र गाथिन। **देवता** - वैश्वानर अग्नि। **छन्द** - जगती।

वैश्वानराय धिषणामृतावृधे घृतं न पूतमग्नये जनामसि।
द्विता होतारं मनुषश्च वाघतो धिया रथं न कुलिशः समृण्वति ॥१॥

सत्यको रक्षा गर्ने वैश्वानर अग्निदेवलाई हामी घिउजस्तै पवित्र स्तुति गर्दछौँ। मानिस र देवताको आह्वान गर्ने ऋत्विक्हरू अग्निदेवलाई आआफ्नो बुद्धिअनुसार दुई रूपमा कालिगडले रथ सिँगारेझैँ सिँगार्दछन्।

स रोचयज्जनुषा रोदसी उभे स मात्रोरभवत्पुत्र ईड्यः।
हव्यवाडग्निरजरश्चनोहितो दूडभो विशामतिथिर्विभावसुः ॥२॥

जन्मनासाथ अग्निदेवले द्यावापृथिवी प्रकाशित गराउँछन्। अग्निदेव पितामातारूपी द्यावापृथिवीका योग्य पुत्र हुन्। हव्यवाहक, अजर, अन्नरूपी धनले सम्पन्न र प्रकाशका अटल राशि अग्निदेव मानिसका अतिथिका रूपमा पूजनीय छन्।

ऋत्वा दक्षस्य तरुषो विधर्मणि देवासो अग्निं जनयन्त चित्तिभिः ।
रुरुचानं भानुना ज्योतिषा महामत्यं न वाजं सनिष्यन्नुप ब्रुवे ॥३॥

बल र काम गर्ने जाँगर भएका दिव्यपुरुषले कर्म र ज्ञानका प्रभावले यज्ञमा अग्नि उत्पन्न गराउँछन्। हामी अन्नका खोजीमा लाग्दा भारी बोक्ने घोडाको प्रशंसा गरेझैँ महान् तेजस्वी अग्निदेवलाई स्तुति गर्दछौँ।

आ मन्द्रस्य सनिष्यन्तो वरेण्यं वृणीमहे अह्रयं वाजमृग्मियम् ।
रातिं भृगूणामुशिजं कविक्रतुमग्निं राजन्तं दिव्येन शोचिषा ॥४॥

प्रशंसनीय अन्नका आशाले हामी भृगु वंशीलाई ऐश्वर्य प्रदान गर्ने, खोजेको कुरो पुऱ्याइदिने, ज्ञानसम्पन्न दिव्य तेजले प्रकाशित हुने, स्तुति गर्न योग्य, वरण गर्न योग्य र उज्ज्वल अग्निदेवलाई स्वीकार गर्दछौँ।

अग्निं सुम्नाय दधिरे पुरो जना वाजश्रवसमिह वृक्तबर्हिषः ।
यतस्रुचः सुरुचं विश्वदेव्यं रुद्रं यज्ञानां साधदिष्टिमपसाम् ॥५॥

यजमानहरू सजिला खालको कुशको आसन ओछ्याएर, सुरी हातमा लिएर बस्तछन्। अन्न र बलले युक्त, उत्तम, प्रकाशमान्, सम्पूर्ण देवताका हितकारी, दुःखनाशक र यज्ञ आदिमा असल कर्म गर्न सघाउने अग्निदेवलाई उनीहरू पहिले स्थापित गर्दछन्।

पावकशोचे तव हि क्षयं परि होतर्यज्ञेषु वृक्तबर्हिषो नरः ।
अग्ने दुव इच्छमानास आप्यमुपासते द्रविणं धेहि तेभ्यः ॥६॥

हे पवित्र, प्रकाशसम्पन्न, होतारूपी अग्निदेव ! तिम्रो सेवा गर्ने यजमानरूपी असल पुरुष यज्ञशालामा कुशको आसन ओछ्याएर स्तुति गर्दछन्। तिनीहरूलाई धन देऊ।

आ रोदसी अपृणदा स्वर्महज्जातं यदेनमपसो अधारयन् ।
सो अध्वराय परि णीयते कविरत्यो न वाजसातये चनोहितः ॥७॥

भर्खर उत्पन्न अग्निलाई यजमानले धारण गरेपछि अग्निले आफ्नो तेजयुक्त प्रकाश द्यावापृथिवी र विस्तृत अन्तरिक्षमा व्याप्त गराए। अन्न पाउने आशाले यज्ञका लागि सज्जित अश्वजस्ता अन्न प्रदान गर्ने र मेधावी अग्निदेव चारै दिशाबाट ल्याइन्छन्।

नमस्यत हव्यदातिं स्वध्वरं दुवस्यत दम्यं जातवेदसम् ।
रथीर्ऋतस्य बृहतो विचर्षणिरग्निर्देवानामभवत्पुरोहितः ॥८॥

हे ऋत्विक्हरू हो ! रथी र विराट् यज्ञका साक्षी अग्निदेव अरू देवताहरूका अगुवाका रूपमा स्थापित भएका छन्। यस्ता हव्यभक्षक, उत्तम यज्ञ सम्पादन गर्नमा कुशल, संयममा रहन सक्ने संसारको ज्ञान भएका अग्निलाई नमस्कार गर्दै सेवा गर।

तिस्रो यह्वस्य समिधः परिज्मनोऽग्नेरपुनन्नुशिजो अमृत्यवः ।
तासामेकामदधुर्मर्त्ये भुजमु लोकमु द्वे उप जामिमीयतुः ॥९॥

खोजिहिँड्ने देवताहरूले सर्वत्र व्याप्त अग्निदेवका लागि तीन वटा विशेष पवित्र समिधा तयार गराए। रक्षणशील तीनमध्ये एकलाई मृत्युलोकमा र बाँकी दुईलाई उनैका दुई लोकमा स्थापित गरे।

विशां कविं विश्पतिं मानुषीरिषः सं सीमकृण्वन्त्स्वधितिं न तेजसे ।
स उद्वतो निवतो याति वेविषत्स गर्भमेषु भुवनेषु दीधरत् ॥१०॥

अन्नको खोजी गर्ने मानवरूपी प्रजाले तेज अस्त्रको झैँ आफ्ना पालक मेधावी अग्निको स्याहार गरे। अग्निदेव उच्च र निम्न प्रदेशमा व्याप्त रहने गर्दछन्। सबै लोकलाई उनैले गर्भधारण गराए।

स जिन्वते जठरेषु प्रजज्ञिवान्वृषा चित्रेषु नानदन्न सिंहः ।
वैश्वानरः पृथुपाजा अमर्त्यो वसु रत्ना दयमानो वि दाशुषे ॥११॥

वैश्वानर अग्निदेव अत्यन्त बलशाली र अमरणशील भएर यजमानलाई उत्तम धन र रत्न दिन्छन्। उनी अत्यन्त ज्ञानसम्पन्न र खोजेको कुरो उपलब्ध गराउँदै मानिसका पेटमा हुर्किएर सिंहको जस्तो अनौठो गर्जना गर्दछन्।

वैश्वानरः प्रत्नथा नाकमारुहद्दिवस्पृष्ठं भन्दमानः सुमन्मभिः ।
स पूर्ववज्जनयज्जन्तवे धनं समानमज्मं पर्येति जागृविः ॥१२॥

उत्तम स्तोत्रले स्तुति गरिने वैश्वानर अग्निदेव अन्तरिक्षमा छँदै द्युलोकका पिठ्युँमा चढ्न पुग्दछन् । पहिलेको जस्तै उनी प्राणीहरू पालिने पदार्थ उत्पन्न गर्दछन् । सधैं जागा रहेर साबिक मार्गबाट भ्रमणशील भइरहन्छन् ।

ऋतावानं यज्ञियं विप्रमुक्थ्य१मा यं दधे मातरिश्वा दिवि क्षयम् ।
तं चित्रयामं हरिकेशमीमहे सुदीतिमग्निं सुविताय नव्यसे ॥१३॥

यज्ञको पालन गर्ने, यज्ञ गरिने, मेधावी, स्तुति गर्न योग्य र द्युलोक निवासी अग्निलाई वायुदेवले धारण गरे । विभिन्न मार्गमा हिंड्ने, दीप्तिमान् ज्वाला भएका, उत्तम प्रकाशले युक्त अग्निदेवसित हामी नयाँ र असल साधनको माग गर्दछौं ।

शुचिं न यामन्निषिरं स्वर्दृशं केतुं दिवो रोचनस्थामुषर्बुधम् ।
अग्निं मूर्धानं दिवो अप्रतिष्कुतं तमीमहे नमसा वाजिनं बृहत् ॥१४॥

अत्यन्त शुद्ध, यज्ञमा जाने, सबैतिर देख्ने, आकाशका भन्डाजस्ता, सधैंका ज्योतिपुञ्ज, उषाकालमै जाग्ने, अन्नका धनी र महान् अग्निदेवलाई हामी नमस्कार र प्रार्थना गर्दछौं ।

मन्द्रं होतारं शुचिमद्वयाविनं दमूनसमुक्थ्यं विश्वचर्षणिम् ।
रथं न चित्रं वपुषाय दर्शतं मनुर्हितं सदमिद्राय ईमहे ॥१५॥

खुसी प्रदान गर्ने, देवतालाई बोलाइदिने, सधैंका शुद्ध, कुटिलताविहीन, शत्रु दमन गर्ने, स्तुति गर्न योग्य, विश्वद्रष्टा, रथजस्तै विलक्षण शोभा भएका, हेर्नमा राम्रा, मानिसको हित गर्ने अग्निदेवसित हामी ऐश्वर्य माग गर्दछौं ।

## [सूक्त - ३]

**ऋषि** – विश्वामित्र गाथिन । **देवता** – वैश्वानर अग्नि । **छन्द** – जगती ।

वैश्वानराय पृथुपाजसे विपो रत्ना विधन्त धरुणेषु गातवे ।
अग्निर्हि देवाँ अमृतो दुवस्यत्यथा धर्माणि सनता न दूदुषत् ॥१॥

ज्ञानी स्तोताहरू सन्मार्ग अनुसरण गर्नका लागि यज्ञमा व्यापक बलले युक्त वैश्वानर अग्निदेवलाई सेवा गर्दछन् । अमर अग्निदेव हव्य आदि पुऱ्याएर देवताहरूको सेवा गर्दछन् । त्यसैले यस सनातन धर्मले कहिल्यै पनि प्रदूषण उत्पन्न गराउँदैन ।

अन्तर्दूतो रोदसी दस्म ईयते होता निषत्तो मनुषः पुरोहितः ।
क्षयं बृहन्तं परि भूषति द्युभिर्देवेभिरग्निरिषितो धियावसुः ॥२॥

सुन्दर अग्निदेव, होता र दूतका रूपमा द्युलोक र पृथ्वीलोकमा सञ्चरित हुन्छन् । देवताहरूबाट प्रेरित ज्ञानले सम्पन्न अग्निदेव मानिसहरूका बीचमा पुरोहितका रूपमा अधिष्ठित भएर आफ्ना तेजले महान् यज्ञशालालाई सुशोभित गर्दछन् ।

केतुं यज्ञानां विदथस्य साधनं विप्रासो अग्निं महयन्त चित्तिभिः ।
अपांसि यस्मिन्नधि संदधुर्गिरस्तस्मिन्त्सुम्नानि यजमान आ चके ॥३॥

मेधावीहरू यज्ञको ध्वजा र साधनरूपी अग्निदेवको पूजा आआफ्नो ज्ञान र कर्मले गर्दछन् । स्तोताहरूले कर्म अर्पित गर्ने अग्निमा यजमान सुखको खोजी गर्दछन् ।

पिता यज्ञानामसुरो विपश्चितां विमानमग्निर्वयुनं च वाघताम् ।
आ विवेश रोदसी भूरिवर्पसा पुरुप्रियो भन्दते धामभिः कविः ॥४॥

अग्निदेव यज्ञलाई पालपोस गर्ने पिताजस्तै हुन् । उनी स्तोताहरूका प्राणदाता र ऋत्विक्हरूको हव्यका वाहक हुन् । अग्निदेव विभिन्न रूपमा द्यावापृथिवीमा प्रवेश हुन्छन् । धेरैका प्रिय र मेधावी अग्निदेव आफ्नै तेजले प्रदीप्त हुन्छन् ।

चन्द्रमग्निं चन्द्ररथं हरिव्रतं वैश्वानरमप्सुषदं स्वर्विदम् ।
विगाहं तूर्णिं तविषीभिरावृतं भूर्णिं देवास इह सुश्रियं दधुः ॥५॥

तेजस्वी रथ भएका, चाँडो काम गर्ने, जलमा निवास गर्ने र सबै कुरो जान्ने अग्निदेव चन्द्रजस्तै छन् । सर्वत्र व्यापक, चाँडो गतिमा हिंड्ने, विभिन्न किसिमको बल भएका, भरणपोषण गर्ने र राम्रो सौन्दर्य भएका वैश्वानर अग्निदेवलाई देवताहरूले यस लोकमा स्थापित गराए ।

अग्निर्देवेभिर्मनुषश्च जन्तुभिस्तन्वानो यज्ञं पुरुपेशसं धिया।
रथीरन्तरीयते साधदिष्टिभिर्जीरो दमूना अभिशस्तिचातनः ॥६॥

यज्ञको साधनजस्तो कर्ममा कुशल अग्निदेव ऋत्विकहरूबाट सञ्चालित यजमानको यज्ञ सम्पन्न गराउँछन्। सर्वत्र गतिमान्, शीघ्रगामी, दानशील, शत्रुनाशक अग्निदेव द्यावापृथिवीका बीचमा यात्रा गर्दछन्।

अग्ने जरस्व स्वपत्य आयुन्यूर्जा पिन्वस्व समिषो दिदीहि नः।
वयांसि जिन्व बृहतश्च जागृव उशिग्देवानामसि सुक्रतुर्विपाम् ॥७॥

हामी लामो आयु र असल सन्तान प्राप्तिका लागि अग्निदेवलाई स्तुति गर्दछौं। हे अग्निदेव ! हामीलाई सबल बनाऊ र अन्न प्रदान गर। हे चेतनमय अग्निदेव ! असल यजमानलाई लामो आयुले सम्पन्न गराऊ। तिमी असल काम गर्ने सज्जन र देवताका लागि तिमी प्रिय छौ।

विश्पतिं यह्वमतिथिं नरः सदा यन्तारं धीनामुशिजं च वाघताम्।
अध्वराणां चेतनं जातवेदसं प्र शंसन्ति नमसा जूतिभिर्वृधे ॥८॥

मानिस आफ्नो उन्नतिका लागि पालन कर्ताका रूपमा, महान् अतिथिका रूपमा पूजनीय र बुद्धिका प्रेरक ऋत्विक्हरूका प्रिय यज्ञको प्राणस्वरूप, ज्ञानका खानी अग्निदेवलाई नमस्कारपूर्वक पूजा गर्दछन्।

विभावा देवः सुरणः परि क्षितीरग्निर्बभूव शवसा सुमद्रथः।
तस्य व्रतानि भूरिपोषिणो वयमुप भूषेम दम आ सुवृक्तिभिः ॥९॥

स्तुति गर्न योग्य, असल रथी, दीप्तिसम्पन्न, दिव्यगुणसम्पन्न अग्निदेव आफ्नो बल सम्पूर्ण प्रजामा व्याप्त गराउँछन्। अनेकौंलाई पालनपोषण गर्ने अग्निदेवका सम्पूर्ण कर्मलाई हामी घरमै बसेर असल स्तोत्रले सजाउँछौं।

वैश्वानर तव धामान्या चके येभिः स्वर्विदभवो विचक्षण।
जात आपृणो भुवनानि रोदसी अग्ने ता विश्वा परिभूरसि त्मना ॥१०॥

हे दूरदर्शी वैश्वानर अग्निदेव ! तिमी जुन तेजले सर्वज्ञाता भयौ, हामी तिनको स्तुति गर्दछौं। हे अग्निदेव ! उत्पन्न भएर तिमीले द्यावा पृथिवी र सम्पूर्ण लोकलाई प्रकाशले पूर्ण गरेका छौ। तिमी आफ्ना शक्तिले सम्पूर्णलाई नै ओगट्न सक्षम छौ।

वैश्वानरस्य दंसनाभ्यो बृहदरिणादेकः स्वपस्यया कविः।
उभा पितरा महयन्नजायताग्निर्द्यावापृथिवी भूरिरेतसा ॥११॥

वैश्वानर अग्निदेवका उत्तम कर्मले यजमानलाई महान् ऐश्वर्य प्राप्त हुन्छ। उत्तम यज्ञ आदि कर्मको रहर गर्ने यजमानलाई विशिष्टतम ज्ञानका खानी अग्निदेव धन आदि दान गर्दछन्। अग्निदेव आफ्नो प्रशस्त बलले मातापिताजस्ता द्यावापृथिवीलाई प्रतिष्ठा प्रदान गर्दै उत्पन्न भएका छन्।

[सूक्त - ४]

ऋषि - विश्वामित्र गाथिन। देवता - आप्रीसूक्त। छन्द - त्रिष्टुप्।

समित्समित्सुमना बोध्यस्मे शुचाशुचा सुमतिं रासि वस्वः।
आ देव देवान्यजथाय वक्षि सखा सखीन्त्सुमना यक्ष्यग्ने ॥१॥

समिधाले राम्रोसित प्रदीप्त हुने हे अग्निदेव ! असल मनले हामीलाई सचेत गराऊ। अत्यन्त पवित्र तेजयुक्त भएर हामीलाई उल्लसित मनले धन प्रदान गर। हे अग्निदेव ! तिमी देवताहरूलाई यज्ञका निमित्त बोलाऊ। तिमी देवताहरूका सखाजस्तै हौ। तिमी प्रसन्न मनले मित्रदेवको यजन गर।

यं देवासस्त्रिरहन्नायजन्ते दिवेदिवे वरुणो मित्रो अग्निः।
सेमं यज्ञं मधुमन्तं कृधी नस्तनूनपाद्घृतयोनिं विधन्तम् ॥२॥

वरुण, मित्र, अग्नि आदि देवताहरू तनूनपाद् यज्ञदेवलाई दिनको तीन पटक दैनिक पूजा गर्दछन्। घिउका आधारमा पुष्ट हुने, देवताहरूलाई सन्तुष्ट गराउने, यस यज्ञलाई मधुरताले परिपूर्ण गराउने ठनै तनूनपाद् देवता हुन्।

प्र दीधितिर्विश्ववारा जिगाति होतारमिळः प्रथमं यजध्यै।
अच्छा नमोभिर्वृषभं वन्दध्यै स देवान्यक्षदिषितो यजीयान् ॥३॥

हाम्रो स्तुति सबैन्दा पहिले वरण गर्न योग्य होतारूपी अग्निदेवका नजिक जाओस्। वन्दना गर्नका

लागि हामी उनै बलशाली अग्निदेवका नजिक स्तुतिका साथै जाऔं। हामी पूजनीय देवताहरूबाट प्रेरित भएर यजन गरौं।

**ऊर्ध्वो वां गातुरध्वरे अकार्यूर्ध्वा शोचींषि प्रस्थिता रजांसि।**
**दिवो वा नाभा न्यसादिहोता स्तृणीमहि देवव्यचा वि बर्हिः ॥४॥**

नाभिकेन्द्रका मध्य होताका रूपमा अग्नि स्थापित छन्। देवताहरूले युक्त अग्निलाई हामी कुश फिँजाउँछौं। तिमीहरू दुवैका ज्वाला अन्तरिक्षमा धेरै माथिसम्म पुग्छन्। हामीले उँभो लगाउने यज्ञरूपी मार्गको आश्रय लिएका छौं।

**सप्त होत्राणि मनसा वृणाना इन्वन्तो विश्वं प्रति यन्नृतेन।**
**नृपेशसो विदथेषु प्र जाता अभीऽ मं यज्ञं वि चरन्त पूर्वीः ॥५॥**

यज्ञद्वारा समस्त जगत्लाई नै पुष्ट गराउने देवताहरू आफ्नै मनका रहरले सात जना होतासहित यज्ञतर्फ गमन गर्दछन्। मनुष्यको जस्तै रूप भएका धेरै देवताहरू प्रकट भएर यज्ञका चारैतिर विचरण गर्दछन्।

**आ भन्दमाने उषसा उपाके उत स्मयेते तन्वाऽ विरूपे।**
**यथा नो मित्रो वरुणो जुजोषदिन्द्रो मरुत्वाँ उत वा महोभिः ॥६॥**

स्तुति गर्न योग्य, भिन्न रूप भएता पनि नजिकै रहने उषा र रात्रि प्रकाशित शरीरले युक्त भएर आगमन गरून्। मित्र, वरुण र मरुत्हरूले युक्त भएर इन्द्रदेवले जुन रूपमा हामीमाथि कृपा गर्दछन्, उसै रूपलाई उनीहरू दुवैले तेजयुक्त भएर धारण गरून्।

**दैव्या होतारा प्रथमा न्यृञ्जे सप्त पृक्षासः स्वधया मदन्ति।**
**ऋतं शंसन्त ऋतमित्त आहुरनु व्रतं व्रतपा दीध्यानाः ॥७॥**

दिव्य र प्रधान अग्निरूप दुवै होतालाई हामी सन्तुष्ट गर्दछौं। अन्नवान् र यज्ञको रहर गर्ने सात ऋत्विक्हरू पनि यी दुवैलाई हविष्यान्नले खुसी पार्दछन्। व्रत पालन गर्ने तेजस्वी ऋत्विक्हरू यज्ञको अनुसरण गर्ने व्रत नै सत्य हो भन्दछन्।

**आ भारती भारतीभिः सजोषा इडा देवैर्मनुष्येभिरग्निः।**
**सरस्वती सारस्वतेभिरर्वाक् तिस्रो देवीर्बर्हिरेदं सदन्तु ॥८॥**

भरणपोषण गर्ने शक्तिका साथमा भारतीदेवी हाम्रा यज्ञमा आऊन्। मानिसहरूका साथमा इडादेवी पनि यस दिव्य अग्निका नजिक आऊ। सारस्वत् वाणीशक्तिसँग सरस्वती देवी पनि आऊन्। यी तीनै देवीहरू आएर कुशका आसनमा बसून्।

**तन्नस्तुरीपमध पोषयित्नु देव त्वष्टर्वि रराणः स्यस्व।**
**यतो वीरः कर्मण्यः सुदक्षो युक्तग्रावा जायते देवकामः ॥९॥**

हे त्वष्टादेव ! तिमी आनन्दी मनले हामीलाई बल र पुष्टियुक्त वीर्य प्रदान गर। त्यसले वीर, कर्मठ, कौशलयुक्त, सोम सिद्ध गर्ने र देवत्वको कामना गर्ने पुत्र उत्पन्न होस्।

**वनस्पतेऽव सृजोप देवानग्निर्हविः शमिता सूदयाति।**
**सेदु होता सत्यतरो यजाति यथा देवानां जनिमानि वेद ॥१०॥**

हे वनका स्वामी ! तिमी देवताहरूलाई हामीकहाँ ल्याऊ। हे पापनाशक अग्निदेव ! हाम्रो हवि देवताहरूकहाँ पुऱ्याऊ। सत्यको व्रत पालन गर्ने अग्निदेवले देवताका सबै कर्म जानेका छौ।

**आ याह्यग्ने समिधानो अर्वाङिन्द्रेण देवैः सरथं तुरेभिः।**
**बर्हिर्न आस्तामदितिः सुपुत्रा स्वाहा देवा अमृता मादयन्ताम् ॥११॥**

हे अग्निदेव ! तिमी राम्ररी समिधासम्पन्न भएर इन्द्रदेव र छिटो हिँड्ने देवताहरूसँग एउटै रथमा बसेर हामीतिर आऊ। उत्तम पुत्र भएकी अदिति हाम्रा कुशमा बसून्। उत्तम आहुतिले अमर देवताहरू सन्तुष्ट होऊन्।

[सूक्त - ५]

ऋषि - विश्वामित्र। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**प्रत्यग्निरुषसश्चेकितानोऽबोधि विप्रः पदवीः कवीनाम्।**
**पृथुपाजा देवयद्भिः समिद्धोऽप द्वारा तमसो वह्निरावः ॥१॥**

अग्निदेव उषालाई चिन्दछन्। मेधावी अग्निदेव क्रान्तदर्शी ज्ञानीका मार्गमा जान चेतन भएका छन्। अत्यन्त तेजस्वी अग्निदेव देवत्व प्राप्त गर्ने रहर भएका व्यक्तिबाट प्रदीप्त भएर अन्धकारबाट मुक्ति प्रदान गर्दछन्।

प्रेद्वग्निर्वावृधे स्तोमेभिर्गीर्भिः स्तोतॄणां नमस्य उक्थैः ।
पूर्वीर्ऋतस्य संदृशश्चकानः सं दूतो अद्यौदुषसो विरोके ॥२॥

पूज्य अग्निदेव स्तोताहरूको वाणी, मन्त्र र स्तोत्रले प्रवुद्ध हुन्छन्। देवताका दूतरूपी अग्निदेव अनेकौं यज्ञमा दीप्तिमान् हुने इच्छाले चेतन भएर उषाकालमा विशेष प्रकाश सम्पन्न हुन्छन्।

अधाय्यग्निर्मानुषीषु विक्ष्वपां गर्भो मित्र ऋतेन साधन्।
आ हर्यतो यजतः सान्वस्थादभूदु विप्रो हव्यो मतीनाम् ॥३॥

यजमानका मित्रजस्ता अग्निदेव यज्ञबाट उनीहरूले खोजेको पुऱ्याइदिन्छन्। जलका गर्भमा रहने अग्निदेव मानिसका बीचमा स्थापित गरिन्छन्। इष्ट र पूज्य अग्निदेव उच्च स्थानमा स्थित हुन्छन्। मेधावी अग्निदेव स्तुति र हव्यद्वारा यजन गर्न योग्य छन्।

मित्रो अग्निर्भवति यत्समिद्धो मित्रो होता वरुणो जातवेदाः ।
मित्रो अध्वर्युरिषिरो दमूना मित्रः सिन्धूनामुत पर्वतानाम् ॥४॥

समिधाले जागृत हुने अग्निदेव मित्र हुन्। मित्र, होता र सबै प्राणीका ज्ञाता वरुण उनै हुन्। मित्र, दानशील अध्वर्यु र प्रेरक वायु उनै हुन्। नदी र पर्वतका मित्र उनै हुन्।

पाति प्रियं रिपो अग्रं पदं वेः पाति यह्वश्चरणं सूर्यस्य ।
पाति नाभा सप्तशीर्षाणमग्निः पाति देवानामुपमादमृष्वः ॥५॥

अत्यन्त सुन्दर अग्निदेव विशाल पृथ्वीका हितकारी र असल स्थानलाई रक्षा गर्दछनन्। महान् सूर्यदेवको परिभ्रमण स्थानलाई उनी रक्षा गर्छन्। अन्तरिक्षमा मरुत्‌हरूको रक्षा पनि उनै गर्दछन् र देवताहरूलाई आनन्दित गराउने यज्ञको रक्षा पनि उनैले गर्दछन्।

ऋभुश्चक्र ईड्यं चारु नाम विश्वानि देवो वयुनानि विद्वान् ।
ससस्य चर्म घृतवत्पदं वेस्तदिदग्नी रक्षत्यप्रयुच्छन् ॥६॥

अग्निदेव सुषुप्त रहे पनि रूप तेजस्वी हुन्छ। सम्पूर्ण महान् कार्यका ज्ञाता, दीप्तिमान् र प्रशंसनीय अग्निदेव सुन्दर जल उत्पन्न गराउँदै तत्परतापूर्वक त्यसको रक्षा गर्दछन्।

आ योनिमग्निर्घृतवन्तमस्थात्पृथुप्रगाणमुशन्तमुशानः ।
दीद्यानः शुचिर्ऋष्वः पावकः पुनः पुनर्मातरा नव्यसी कः ॥७॥

तेजस्वी र स्तुत्य अग्निदेव आफूखुसी आफ्नो प्रिय गोप्य स्थानमा रहन्छन्। दीप्तिमान्, शुद्ध, महान् र पवित्र अग्निदेव आफ्ना मातापितारूपी पृथ्वी र द्युलोकलाई बारम्बार नयाँ बनाइरहन्छन्।

सद्यो जात ओषधीभिर्ववक्षे यदी वर्धन्ति प्रस्वो घृतेन ।
आप इव प्रवता शुम्भमाना उरुष्यदग्निः पित्रोरुपस्थे ॥८॥

जन्मनासाथै अग्निदेवलाई औषधिले धारण गरेपछि मार्गमा प्रवाहित जलजस्तै शुभ्र औषधि जलबाट पोषित हुँदै फलदायक बन्छन्। अग्निदेवले आफ्ना मातापितारूपी पृथिवी र द्युलोकका बीचमा बढेर हाम्रो रक्षा गरून्।

उदु ष्टुतः समिधा यह्वो अद्यौद्वर्ष्मन्दिवो अधि नाभा पृथिव्याः ।
मित्रो अग्निरीड्यो मातरिश्वा दूतो वक्षद्यजथाय देवान् ॥९॥

हामीले स्तुति गर्दा अग्निदेव पृथ्वीमा प्रतिष्ठित भएर द्युलोकमा प्रकाशित भएका छन्। अग्निदेव सबैका लागि मित्रजस्तै, सबैबाट स्तुति गरिने योग्य र अरणीबाट उत्पन्न हुने गरेका छन्। अग्निदेव देवताहरूका दूतझैं प्रतिष्ठित भएर यज्ञका लागि देवताहरूलाई राम्ररी बोलाऊन्।

उदस्तम्भीत्समिधा नाकमृष्वोऽग्निर्भवन्नुत्तमो रोचनानाम् ।
यदी भृगुभ्यः परि मातरिश्वा गुहा सन्तं हव्यवाहं समीधे ॥१०॥

मातरिश्वाले भृगुका लागि गुफामा रहेका हव्यवाहक अग्निलाई प्रज्वलित गराएपछि तेजस्वीहरूमा रोज्न योग्य र महान् उनै अग्निदेवले आफ्ना दिव्य तेजले सूर्यलाई पनि अचम्म गराइदिए।

इळामग्ने पुरुदंसं सनिं गोः शश्वत्तमं हवमानाय साध ।
स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥११॥

हे अग्निदेव ! तिमी यज्ञ आदि कार्यका लागि, अनेकौं सत्कर्मका लागि र गाईको पोषणका लागि उचित भूमि हामीलाई प्रदान गर। हाम्रा पुत्रले सन्तान बढाऊन्। तिम्रो सद्‌बुद्धि हामीलाई पनि प्राप्त होस्।

[सूक्त - ६]

ऋषि - विश्वामित्र गाथिन। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**प्र कारवो मनना वच्यमाना देवद्रीचीं नयत देवयन्तः।**
**दक्षिणावाड्वाजिनी प्राच्येति हविर्भरन्त्यग्नये घृताची ॥१॥**

हे स्तोताहरू हो ! मन्त्रयुक्त स्तोत्रका साथ देवताको यजनमा प्रयोग हुने सुरो लिएर आओ। अन्नले भरिएको सुरो दक्षिण दिशाबाट ल्याएर पूर्व दिशामा हवि र घिउले भरेर अग्नितर्फ ल्याउनुपर्दछ।

**आ रोदसी अपृणा जायमान उत प्र रिक्था अध नु प्रयज्यो।**
**दिवश्चिदग्ने महिना पृथिव्या व्यच्यन्तां ते वह्नयः सप्तजिह्वा ॥२॥**

हे अग्निदेव ! जन्मका साथै तिमी द्युलोक र पृथ्वीलाई परिपूर्ण गराउँछौ। हे यजनका लागि योग्य अग्निदेव ! तिमी आफ्नै महिमाले नै द्यावा, पृथिवी र अन्तरिक्षभन्दा महान् भएका छौ। तिम्रा अंशरूपी सात ज्वालाले युक्त किरण स्तुत्य होस्।

**द्यौश्च त्वा पृथिवी यज्ञियासो नि होतारं सादयन्ते दमाय।**
**यदी विशो मानुषीर्देवयन्तीः प्रयस्वतीरिडते शुक्रमर्चिः ॥३॥**

हे होता अग्निदेव ! देवत्वको आशाले हविष्यान्नबाट युक्त भएर यजमानहरू तेजस्वी ज्वालाको स्तुति गर्दछन्। त्यस बेला द्युलोक, पृथिवी र यजनीय देवताहरू यज्ञको सफलताका लागि तिमीलाई स्थापना गर्दछन्।

**महान्त्सधस्थे ध्रुव आ निषत्तोऽन्तर्द्यावा माहिने हर्यमाणः।**
**आस्क्रे सपत्नी अजरे अमृक्ते सबर्दुघे उरुगायस्य धेनू ॥४॥**

याजकका प्रिय, महान् अग्निदेव तेजस्वितापूर्वक द्यावा र पृथिवीका बीचमा आफ्नो महिमामय स्थानमा अविचल रूपमा स्थित हुन्छन्। सौताजस्तै एकापसमा आबद्ध, अमृत उत्पादन गर्ने द्यावा र पृथिवी महान् अग्निदेवका लागि दुधालु गाईजस्तै छन्।

**व्रता ते अग्ने महतो महानि तव क्रत्वा रोदसी आ ततन्थ।**
**त्वं दूतो अभवो जायमानस्त्वं नेता वृषभ चर्षणीनाम् ॥५॥**

हे अग्निदेव ! तिमी महान् छौ। तिम्रो कर्म महान् छ। तिमीले यज्ञ आदि कर्मबाट द्यावापृथिवीलाई विस्तृत गराउने देवताका दूतका रूपमा सम्मानित छौ। हे बलशाली अग्निदेव ! तिमी जन्मदेखि नै याजकहरूका नेता हौ।

**ऋतस्य वा केशिना योग्याभिर्घृतस्नुवा रोहिता धुरि धिष्व।**
**अथा वह देवान्देव विश्वान्त्स्वध्वरा कृणुहि जातवेदः ॥६॥**

हे दीप्तिमान् अग्निदेव ! धेरै जगर भएका, लगाम लगाइएका, तेजसम्पन्न, राता अश्व यज्ञका लागि रथका धुरीमा आबद्ध गर। त्यसपछि सबै देवताहरूलाई बोलाएर ल्याऊ। हे सर्वभूत ज्ञाता अग्निदेव ! देवताहरूलाई हाम्रा महान् यज्ञसित सम्बन्धित गराऊ।

**दिवश्चिदा ते रुचयन्त रोका उषो विभातीरनु भासि पूर्वीः।**
**अपो यदग्न उशधग्वनेषु होतुर्मन्द्रस्य पनयन्त देवा ॥७॥**

हे अग्निदेव ! वनको जल शोषण गर्दा तिम्रो दीप्ति सूर्यभन्दा बढी तेजिलो हुन्छ। तिमी कान्तिसम्पन्न उषाका पछिपछि टड्कारै देखिन्छौ। विद्वान् स्तोताहरू खुसी मनले होताका रूपमा तिमीलाई स्तुति गर्दछन्।

**उरौ वा ये अन्तरिक्षे मदन्ति दिवो वा ये रोचने सन्ति देवाः।**
**ऊमा वा ये सुहवासो यजत्रा आयेमिरे रथ्यो अग्ने अश्वाः ॥८॥**

स्वर्ग र दीप्तिमान् द्युलोकमा ऊम् नामका यजनीय पितृका रूपमा देवताहरू खुसी रहेका हुन्छन्। ती सबै देवताहरू यहाँ सम्मानपूर्वक बोलाइन्छन्। हे अग्निदेव ! तिमी घोडा नारिएका रथले उनीहरूलाई यहाँ ल्याइदेऊ।

**ऐभिरग्ने सरथं याह्यर्वाङ्नानारथं वा विभवो ह्यश्वाः।**
**पत्नीवतस्त्रिंशतं त्रींश्च देवाननुष्वधमा वह मादयस्व ॥९॥**

हे अग्निदेव जति देवतालाई तिम्रा अश्वले बोक्न सक्दछन्, ती सबैलाई लिएर एउटै रथमा बसी वा विभिन्न रथमा हामीकहाँ लिएर आऊ। तेत्तीस पत्नीसँगै देवताहरूलाई सोमपानका लागि लिएर आऊ र उनीहरूलाई खुसी बनाऊ।

**स होता यस्य रोदसी चिदुर्वी यज्ञं यज्ञमभि वृधे गृणीतः ।**
**प्राची अध्वरेव तस्थतुः सुमेके ऋतावरी ऋतजातस्य सत्ये ॥१०॥**

अत्यन्तै फैलिएका द्यावा र पृथिवी प्रत्येक यज्ञमा जसको उन्नतिका लागि स्तुति गर्दछन्, उनै आह्वानकर्ता अग्निदेव हुन्। सुन्दर रूप भएका, परिपूर्ण जल भएका, सत्यको स्वरूप भएका द्यावापृथिवी यज्ञजस्तै सत्य रूपमा उत्पन्न अग्निदेवका अनुकूल छन्।

**इडामग्ने पुरुदंसं सनिं गोः शश्वत्तमं हवमानाय साध ।**
**स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥११॥**

हे अग्निदेव ! तिमी यज्ञ आदि कार्यका लागि, अनेकौं सत्कर्मका लागि र गाईहरूको पोषणका लागि उचित भूमि हामीलाई प्रदान गर। हाम्रा पुत्रले सन्तान बढाऊन्। तिम्रो सद्बुद्धि हामीलाई पनि प्राप्त होस्।

## [सूक्त - ७]

ऋषि - विश्वामित्र गाथिन। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**प्र य आरुः शितिपृष्ठस्य धासेरा मातरा विविशुः सप्त वाणीः ।**
**परिक्षिता पितरा सं चरेते प्र सर्स्राते दीर्घमायुः प्रयक्षे ॥१॥**

पछिल्लो भाग नीलो भएको सबैले धारण गर्ने अग्निदेवको ज्वालो उचालिन्छ। उनी मातापितारूपी द्यावापृथिवीमा र प्रवाहमान सात धारा पानीमा प्रवेश हुन्छन्। सर्वतिर व्यापक रहेका यी अग्निदेवसँग द्यावापृथिवीको संरचना हुन्छ। ती दुवैले अग्निदेवलाई दीर्घायु प्रदान गर्दछन्।

**दिवक्षसो धेनवो वृष्णो अश्वा देवीरा तस्थौ मधुमद्वहन्तीः ।**
**ऋतस्य त्वा सदसि क्षेमयन्तं पर्येका चरति वर्तनिं गौः ॥२॥**

द्युलोकमा व्याप्त बलशाली अग्निदेवका अश्व र धेनु छन्। अग्निदेव मधुर प्रवाहमा स्थिर रहन्छन्। हे अग्निदेव ! तिमी यज्ञशालामा आफ्नो ज्वाला फैलाउँछौ। एउटै गाईले तिम्रो स्याहार गर्दछ।

**आ सीमरोहत्सुयमा भवन्तीः पतिश्चिकित्वान्रयिविद्रयीणाम् ।**
**प्र नीलपृष्ठो अतसस्य धासेस्ता अवासयत्पुरुधप्रतीकः ॥३॥**

धनमध्ये उत्कृष्ट धनले सम्पन्न, ज्ञानसम्पन्न, अधीश्वरसरिका अग्निदेव राम्ररी जोतिएका अश्वमाथि चढ्छन्। नीलो पिठ्युँ भएका, विभिन्न चिह्नका रूपमा रहेका अग्निदेवले निरन्तर प्रयोगका लागि समिधा आफ्ना नजिकै राखेका छन्।

**महि त्वाष्ट्रमूर्जयन्तीरजुर्यं स्तभूयमानं वहतो वहन्ति ।**
**व्यङ्गे भिर्दिद्युतानः सधस्थ एकामिव रोदसी आ विवेश ॥४॥**

बलशाली र प्रवाहमान धाराले महान् त्वष्टाका पुत्र, अजर, सर्वभूतधारक अग्निदेवलाई धारण गर्दछन्। मानिस पत्नीतिर गएझैं प्रज्वलित अग्निदेव अत्यन्त दीप्तिमान् अङ्गले युक्त भएर द्यावापृथिवीमा व्याप्त रहन्छन्।

**जानन्ति वृष्णो अरुषस्य शेवमुत ब्रध्नस्य शासने रणन्ति ।**
**दिवोरुचः सुरुचो रोचमाना इडा येषां गण्या माहिना गीः ॥५॥**

बलशाली र अहिंस्रक अग्निदेवको आश्रयरूपी सुख मानिसले चिनेका छन् र त्यसैका संरक्षणमा आनन्दपूर्वक रहन्छन्। जसका लागि स्तोताको स्तुतिरूपी वाणी प्रवाहित हुन्छ, उनै अग्निदेव आकाश उजिल्याउँदै आफू पनि उत्तम प्रकाशले प्रकाशमान भए।

**उतो पितृभ्यां प्रविदानु घोषं महो महद्भ्यामनयन्तशूषम् ।**
**उक्षा ह यत्र परि धानमक्तोरनु स्वं धाम जरितुर्ववक्ष ॥६॥**

उत्कृष्टतम पितामातारूपी द्यावापृथिवीमा व्याप्त अग्निदेवलाई स्तोताहरूले चिने र खुसी हुँदै उच्च उद्घोषले स्तुति गरे। जल सेचन गराउने अग्निदेव राती छोपिएको आफ्ना तेजलाई स्तोताहरूका लागि प्रेरित गराउँछन्।

**अध्वर्युभिः पञ्चभिः सप्त विप्राः प्रियं रक्षन्ते निहितं पदं वेः ।**
**प्राञ्चो मदन्त्युक्षणो अजुर्या देवा देवानामनु हि व्रता गुः ॥७॥**

पाँच अध्वर्युसँग सात होताले कान्तियुक्त अग्निदेवको प्रिय स्थान सुरक्षित पार्दछन्। ऋत्विकहरू पूर्वतिर फर्केर सोमपान आदिका निमित्त अथक प्रयास गर्दछन् र देवताको नियम अनुसरण गर्दछन्। उनीहरूसित देवता अत्यन्त खुसी हुन्छन्।

दैवा होतारा प्रथमा न्यृञ्जे सप्त पृक्षासः स्वधया मदन्ति।
ऋतं शंसन्त ऋतमित्त आहुरनु व्रतं व्रतपा दीध्यानाः ॥८॥

हामी दिव्य अग्नि र प्रथम अग्निरूपी दुवै होतालाई सन्तुष्ट गराउँछौं। अन्नयुक्त यज्ञको इच्छा गर्ने सात ऋत्विक्हरू पनि यी दुवैलाई हविष्यान्नले खुसी पार्दछन्। व्रत पालना गर्ने र तेजस्वी ऋत्विक्हरू यज्ञ आदि व्रतको अनुसरण गर्नु नै सत्य हो भन्दछन्।

वृषायन्ते महे अत्याय पूर्वीर्वृष्णे चित्राय रश्मयः सुयामाः।
देव होतर्मन्द्रतरश्चिकित्वान्महो देवान्रोदसी एह वक्षि ॥९॥

दीप्तिमान् देवताहरूलाई आह्वान गर्ने हे अग्निदेव ! तिमी सबैलाई प्रकाशपूर्ण गराउने, महान्, विलक्षण वर्ण भएका र बलले सम्पन्न छौ। विविध खालका सुविस्तृत, सर्वत्र गमनशील रश्मिले तिमीलाई बलशाली बनाउँछन्। आनन्ददायक, ज्ञानसम्पन्न, महान् देवताहरू र द्यावापृथिवीलाई यहाँ लिएर आऊ।

पृक्षप्रयजो द्रविणः सुवाचः सुकेतव उषसो रेवदूषुः।
उतो चिदग्ने महिना पृथिव्याः कृतं चिदेनः सं महे दशस्य ॥१०॥

सर्वत्र गमनशील, उत्तम धनले सम्पन्न, उत्तम वाणीले स्तुति गर्न योग्य, उत्तम किरण युक्त उषादेवी हामीलाई धनसम्पन्न गराउँदै प्रकाशित हुन्छिन्। हे अग्निदेव ! तिमी आफ्ना व्यापक महिमाले यजमानको पाप विनाश गर।

इळामग्ने पुरुदंसं सनिं गोः शश्वत्तमं हवमानाय साध।
स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥११॥

हे अग्निदेव ! तिमी यज्ञ आदि कार्यका लागि, अनेकौं सत्कर्मका लागि र गाईको पोषणका लागि उचित भूमि हामीलाई प्रदान गर। हाम्रा पुत्रले सन्तान बढाऊन्। तिम्रो सद्बुद्धि हामीलाई पनि प्राप्त होस्।

### [सूक्त - ८]

ऋषि - विश्वामित्र गाथिन। देवता - यूप। छन्द - त्रिष्टुप् अनुष्टुप्।

अञ्जन्ति त्वामध्वरे देवयन्तो वनस्पते मधुना दैव्येन।
यदूर्ध्वस्तिष्ठा द्रविणेह धत्ताद्यद्वा क्षयो मातुरस्या उपस्थे ॥१॥

हे वनस्पतिदेव ! देवत्वको आशा गर्ने ऋत्विक्हरू यज्ञमा तिमीलाई दिव्य मधुले सेचन गर्दछन्। तिमी उन्नत अवस्थामा या पृथ्वीका काखमा बसेर हामीलाई धन प्रदान गर।

समिद्धस्य श्रयमाणः पुरस्ताद्ब्रह्म वन्वानो अजरं सुवीरम्।
आरे अस्मदमतिं बाधमान उच्छ्रयस्व महते सौभगाय ॥२॥

प्रज्वलित हुनुभन्दा पहिलेदेखि नै रहेका ब्रह्मवर्चस् प्रदान गर्ने हे अजर, श्रेष्ठ, वीर ! हाम्रो कुबुद्धि नाश गर्दै धेरै परसम्म हामीलाई सौभाग्य प्रदान गर्नका लागि उच्च पदमा स्थित रहेका छौ।

उच्छ्रयस्व वनस्पते वर्ष्मन्पृथिव्या अधि।
सुमिती मीयमानो वर्चो धा यज्ञवाहसे ॥३॥

हे वनस्पतिदेव ! पृथ्वीभन्दा माथि यज्ञशालाको उच्च स्थानमा उभिएका छौ। आफ्नो उच्चतम परिमाणले युक्त छौ। यज्ञ निर्वाह गर्नेहरूलाई यस्तै वर्चस् धारण गराऊ।

युवा सुवासाः परिवीत आगात्स उ श्रेयान्भवति जायमानः।
तं धीरासः कवय उन्नयन्ति स्वाध्यो३ मनसा देवयन्तः ॥४॥

राम्रो वस्त्र लगाएका यी तरुण आइसकेका छन्। यिनी जन्मदेखि नै उत्तम हुन्छन्। देवत्वको कामना गर्ने मेधावी, अध्ययनशील, दूरदर्शी, विवेकवान् पुरुषले मन लगाएर यिनको उन्नति गराउँछन्।

जातो जायते सुदिनत्वे अह्नां समर्य आ विदथे वर्धमानः।
पुनन्ति धीरा अपसो मनीषा देवया विप्र उदियर्ति वाचम् ॥५॥

भुईंमा उम्रिएका बिरुवाहरू मानिससँगै हुर्कंदै बढ्दै यज्ञलाई सुन्दर बनाउँछन्। यज्ञ कर्म गर्ने धीर मनीषीहरूले यिनलाई पवित्र बनाउँछन्। देवताको आराधना गर्ने विप्रले सुन्दर स्तुति पाठ गर्दछन्।

यान्वो नरो देवयन्तो निमिम्युर्वनस्पते स्वधितिर्वा ततक्ष।
ते देवासः स्वरवस्तस्थिवांसः प्रजावदस्मे दिधिषन्तु रत्नम् ॥६॥

हे वनस्पति ! देवकर्ममा लागेका मानिसहरूले तिमीहरूलाई जाँतोमा हाले वा धारिला हतियारले काटे। तिनै तिमीहरू सूर्यदेवजत्तिकै तेजस्वी र दिव्य गुणले सम्पन्न भयौ। तिमीहरू याजकलाई असल सन्तानले युक्त रत्न आदि प्रदान गर।

ये वृक्णासो अधि क्षमि निमितासो यतस्रुचः।
ते नो व्यन्तु वार्यं देवत्रा क्षेत्रसाधसः ॥७॥

बन्चराले काटेका वा ऋत्विकले जाँतामा हालेका वनस्पतिहरूले यज्ञ सिद्ध गराउन हामीलाई सबैले स्वीकार गर्न योग्य विभूति प्रदान गर।

आदित्या रुद्रा वसवः सुनीथा द्यावाक्षामा पृथिवी अन्तरिक्षम्।
सजोषसो यज्ञमवन्तु देवा ऊर्ध्वं कृण्वन्त्वध्वरस्य केतुम् ॥८॥

उत्तम प्रेरणाका स्रोत आदित्यगण, रुद्रगण, वसुदेव, विस्तृत द्यावापृथिवी, अन्तरिक्ष र आपसमा प्रेमभावले सम्पन्न देवताहरूले हाम्रा यज्ञको रक्षा गरून् र यज्ञको ध्वजारूपी धुवाँ माथि पुऱ्याऊन्।

हंसा इव श्रेणिशो यतानाः शुक्रा वसानाः स्वरवो न आगुः।
उन्नीयमानाः कविभिः पुरस्ताद्देवा देवानामपि यन्ति पाथः ॥९॥

सूर्यजस्तै शुभ्र तेजयुक्त, उँभोतिर लागेको धुवाँ लहरमा बसेका हाँसजस्तो देखिँदै छ। विद्वान्‌हरूभन्दा पहिले नै यसले देवमार्गबाट द्युलोक प्राप्त गर्दछ।

शृङ्गाणीवेच्छृङ्गिणां सं ददृश्रे चषलवन्तः स्वरवः पृथिव्याम्।
वाघद्भिर्वा विहवे श्रोषमाणा अस्माँ अवन्तु पृतनाज्येषु ॥१०॥

चमकदार वनस्पति खण्ड मौलोका रूपमा पृथ्वीमा स्थापित भएको छ। यो पशुको सिङजस्तै देखिएको छ। यज्ञमा स्तोताको स्तुति सुनेर सबै हाम्रो रक्षक होस्।

वनस्पते शतवल्शो वि रोह सहस्रवल्शा वि वयं रुहेम।
यं त्वामयं स्वधितिस्तेजमानः प्रणिनाय महते सौभगाय ॥११॥

हे वनस्पति ! अत्यन्त धारिलो फर्साले तिमीलाई महान् सौभाग्यका लागि निर्माण गरिएको छ। तिमी सयौं शाखाले युक्त भएर बढिराख र हामी पनि हजारौं शाखाले युक्त भएर उन्नति गर्न सक्ने होऔं।

[सूक्त - ९]

ऋषि – विश्वामित्र गाथिन। देवता – अग्नि। छन्द – बृहती त्रिष्टुप्।

सखायस्त्वा ववृमहे देवं मर्तास ऊतये।
अपां नपातं सुभगं सुदीदितिं सुप्रतूर्तिमनेहसम् ॥१॥

हे उत्तमकर्मा, उत्तम ऐश्वर्ययुक्त, निष्पाप, पापनाशक, पानीलाई तल खस्न नदिने अग्निदेव ! संरक्षण पाउनका लागि हामी मानिसहरू तिम्रो मित्रभाव स्वीकार गर्दछौं।

कायमानो वना त्वं यन्मातॄरजगन्नपः।
न तत्ते अग्ने प्रमृषे निवर्तनं यद्दूरे सन्निहाभवः ॥२॥

हे अग्निदेव ! तिमी वनलाई आकार प्रदान गर्ने हौ। तिमी मातारूपी जलका नजिक शान्त भावमा हुन्छौ। तिम्रो समाप्ति हामीलाई सहन नहोस्। तिमी टाढा भएर पनि हाम्रा नजिकै प्रकट हुन्छौ।

अति तृष्टं ववक्षिथाथैव सुमना असि।
प्रप्रान्ये यन्ति पर्यन्य आसते येषां सख्ये असि श्रितः ॥३॥

हे अग्निदेव ! तिमी स्तोताको स्तुति सुनेपछि खोजेको कुरो प्रदान गर्न अति समर्थ छौ। त्यसका साथै तिमी सधैँभरि खुसी रहन्छौ। जुन ऋत्विक्‌हरूसँग तिम्रो मित्रभाव हुन्छ, तिनीहरू यज्ञ आदि कर्ममा लागेका हुन्छन्, अरू वरिपरि बसेर स्तुति आदि गर्दछन्।

ईयिवांसमति स्रिधः शश्वतीरति सश्चतः।
अन्वीमविन्दन्निचिरासो अद्रुहोऽप्सु सिंहमिव श्रितम् ॥४॥

शत्रुसेना पराजय गराउने, जलमा लुकेका, सिंहजस्तै पराक्रमी, द्रोह नगर्ने र अविनाशी अग्निदेवलाई देवताहरूले फेला पारे।

ससृवांसमिव त्मनाग्निमित्था तिरोहितम्।
ऐनं नयन्मातरिश्वा परावतो देवेभ्यो मथितं परि ॥५॥

छाडा छोराछोरीलाई बाबुआमाले बलपूर्वक नियन्त्रण गरेझैं स्वेच्छाले गुफा पसेका अग्निलाई मातरिश्वा वायुले राम्ररी मन्थन गरेर दूरदेशबाट देवताहरूका लागि ल्याए।

तं त्वा मर्ता अगृभ्णत देवेभ्यो हव्यवाहन।
विश्वान्यद्यज्ञाँ अभिपासि मानुष तव क्रत्वा यविष्ठ्य ॥६॥

हे मानिसका हितकारी, सधैँ तन्नेरी रहने अग्निदेव ! आफ्ना पराक्रमपूर्ण चर्तिकलाले सम्पूर्ण यज्ञको पालना गर्दछौ। हे हव्य आदि वहन गर्ने अग्निदेव ! मानिसहरूले तिमीलाई देवताका लागि ग्रहण गरेका हुन्।

तद्भद्रं तव दंसना पाकाय चिच्छदयति।
त्वां यदग्ने पशवः समासते समिद्धमपिशर्वरे ॥७॥

हे अग्निदेव ! रातका समयमा तिमी प्रज्वलित भएपछि पशुहरू पनि तिम्रा नजिकै आएर बस्तछन्। तिम्रो यस्ता हितकारी कर्मले बालकजस्ता अज्ञानीलाई पनि पूजाका निम्ति प्रेरित गर्दछ।

आ जुहोता स्वध्वरं शीरं पावकशोचिषम्।
आशुं दूतमजिरं प्रत्नमीड्यं श्रुष्टी देवं सपर्यत ॥८॥

हे ऋत्विक्हरू हो ! पवित्र दीप्तिले युक्त, काठमा सुतेका, उत्तम यज्ञ सम्पन्न गराउने अग्निदेवलाई हव्य आदिले सेवा गर। उनी सर्वत्र व्याप्त, दूतको रूप, शीघ्र गमनशील, सधैँ चिनिएका, सबैले धेरै स्तुति गर्ने, दीप्तिमान् अग्निदेवको पूजा चाँडै गर।

त्रीणि शता त्री सहस्राण्यग्निं त्रिंशच्च देवा नव चासपर्यन्।
औक्षन्घृतैरस्तृणन्बर्हिरस्मा आदिद्धोतारं न्यसादयन्त ॥९॥

तीन हजार, तीन सय उन्चालीस देवताहरूले अग्निदेवको पूजा गरेका छन्। उनलाई घिउले सेचन गरेका छन् र उनका लागि कुशको आसन ओछ्याएका छन्। अनि फेरि उनीहरू सबैले तिनलाई होताका रूपमा वरण गरेर माथि विराजित गराएका छन्।

[सूक्त - १०]

ऋषि – विश्वामित्र गाथिन। देवता – अग्नि। छन्द – उष्णिक्।

त्वामग्ने मनीषिणः सम्राजं चर्षणीनाम्। देवं मर्तास इन्धते समध्वरे ॥१॥

हे अग्निदेव ! तिमी मनीषीहरूका अधीश्वर र दीप्तिमान् छौ। तिमीलाई मेधावीहरू यज्ञमा उचित रूपले प्रदीप्त गराउँछन्।

त्वां यज्ञेष्वृत्विजमग्ने होतारमीळते। गोपा ऋतस्य दीदिहि स्वे दमे ॥२॥

हे अग्निदेव ! तिमी होता र ऋत्विक्को रूप हौ। यज्ञमा तिम्रै स्तुति गरिन्छ। यज्ञको रक्षकका रूपमा तिमी आफ्ना यज्ञशालामा प्रदीप्त होऊ।

स घा यस्ते ददाशति समिधा जातवेदसे। सो अग्ने धत्ते सुवीर्यं स पुष्यति ॥३॥

हे अग्निदेव ! तिमी सबै प्राणीलाई चिन्दछौ। तिम्रा लागि समिधा दिने यजमानले निश्चित रूपमा पराक्रमी पुत्र प्राप्त गर्दछ र ऊ पशु आदि ऐश्वर्यले समृद्ध पनि हुन्छ।

स केतुरध्वराणामग्निर्देवेभिरा गमत्। अञ्जानः सप्त होतृभिर्हविष्मते ॥४॥

यज्ञको ध्वजाजस्तो गति भएका अग्निदेवलाई सात होताले घिउ आदिले अभिषेक गरेर हविदाता यजमानका नजिकै देवताहरूका साथै आऊन्।

प्र होत्रे पूर्व्यं वचोऽग्नये भरता बृहत्। विपां ज्योतींषि बिभ्रते न वेधसे ॥५॥

हे ऋत्विक्हरू हो ! मेधावीहरूमा तेज, धारण गर्ने, प्रत्येक जनको उन्नति गराउने, देवतालाई बोलाइदिने अग्निदेवका लागि महान् र पुरातन स्तोत्र उच्चारण गर।

अग्निं वर्धन्तु नो गिरो यतो जायत उक्थ्यः। महे वाजाय द्रविणाय दर्शतः ॥६॥

महान् अन्न र बल प्राप्तिका लागि अग्निदेव प्रज्वलित भएर सुन्दर रूपमा देखा पर्दछन्। स्तुति वचनले प्रशंसित हुने अग्निदेवलाई हाम्रा स्तुति वचनले वृद्धि गरोस्।

**अग्ने यजिष्ठो अध्वरे देवान्देवयते यज। होता मन्द्रो विराजस्यति स्रिधः ॥७॥**
यज्ञमा पूजनीय, देवतालाई बोलाउने र शत्रुमाथि विजय प्राप्त गर्ने हे अग्निदेव ! तिमी याजक र देवताहरूका लागि यज्ञको नियम पूरा गराउँदै साह्रै राम्रा देखिन्छौ।

**स नः पावक दीदिहि द्युमदस्मे सुवीर्यम् भवा स्तोतृभ्यो अन्तमः स्वस्तये ॥८॥**
हे पवित्र बनाउने अग्निदेव ! हामीलाई तिमी दीप्तिमान् र उत्तम तेजयुक्त ऐश्वर्य प्रदान गर र स्तोताको हितका लागि उनीहरूका नजिकै जाऊ।

**त्वं त्वा विप्रा विपन्यवो जागृवांसः समिन्धते। हव्यवाहममर्त्यं सहोवृधम् ॥९॥**
हवि वहन गर्ने, अमर स्वभावका, मन्थनरूपी बलले बढ्ने हे अग्निदेव ! मनग्गे बुद्धि भएका, मेधावी स्तोताहरूले तिमीलाई राम्ररी प्रकाशित गराउँछन्।

[सूक्त – ११]

**ऋषि** – विश्वामित्र गाथिन। **देवता** – अग्नि। **छन्द** – गायत्री।

**अग्निर्होता पुरोहितोऽध्वरस्य विचर्षणिः स वेद यज्ञमानुषक् ॥१॥**
अग्निदेव यज्ञ आदि सबै कर्मका होता, पुरोहित र यज्ञका विशिष्ट साक्षी हुन्। उनी निरन्तर चल्ने गरेका यज्ञ आदि कर्मको जानकारी भएका छन्।

**स हव्यवाडमर्त्य उशिग्दूतश्चनोहितः अग्निर्धिया समृण्वति ॥२॥**
हवि वहन गर्ने, ननासिने, हव्य आदिको रहर गर्ने, देवताहरूका दूतजस्ता, अन्नले सबैको हित गर्ने यी अग्निदेव विचार शक्तिले सम्पन्न छन्।

**अग्निर्धिया स चेतति केतुर्यज्ञस्य पूर्व्यः। अर्थं ह्यस्य तरणि ॥३॥**
यज्ञका ध्वजाजस्ता, निर्देशक र सबैभन्दा पुराना अग्निदेव आफ्ना बुद्धिले सबै कुरो जान्दछन्। यिनीले दिएको धन पार लगाउने खालको हुन्छ।

**अग्निं सूनुं सनश्रुतं सहसो जातवेदसम्। वह्निं देवा अकृण्वत ॥४॥**
बलका पुत्रजस्ता, सनातन कालदेखि प्रसिद्ध, ज्ञानका खानी अग्निदेवलाई देवताहरूले हविवाहक बनाएका छन्।

**अदाभ्यः पुरएता विशामग्निर्मानुषीणाम्। तूर्णी रथः सदा नवः ॥५॥**
मानिसका अगुवा मार्गदर्शक, तत्काल क्रियाशील, रथजत्तिकै चाँडो गति भएका, सधैं युवा रहने यी अग्निदेव सर्वथा अदम्य छन्।

**साह्वान्विश्वा अभियुजः क्रतुर्देवानाममृक्तः। अग्निस्तु विश्वश्रवस्तमः ॥६॥**
आक्रामक, शत्रुका सेनालाई परास्त गराउने, दिव्य गुण बढाउने हे अग्निदेव ! तिमी मनग्गे अन्न प्रदान गर्दछौ।

**अभि प्रयांसि वाहसा दाश्वाँ अश्नोति मर्त्यः। क्षयं पावकशोचिषः ॥७॥**
हविदाता मानिसहरू हविवाहक अग्निदेवबाट सबै किसिमका अन्न र पवित्र प्रकाशले युक्त उत्तम आवास पाउँछन्।

**परि विश्वानि सुधिताग्नेरश्याम मन्मभिः। विप्रासो जातवेदसः ॥८॥**
सबै विषय जान्ने र मेधावी अग्निदेवसित हामी उत्तम स्तोत्रद्वारा मन लागेका सबै खालका ऐश्वर्यहरू सबै तिरबाट प्राप्त गरौं।

**अग्ने विश्वानि वार्या वाजेषु सनिषामहे। त्वे देवास एरिरे। ९ ॥**
हे अग्निदेव ! देवताहरूले तिमीसित प्रेरणा प्राप्त गरे, हामी पनि तिमीसित प्रेरित भएर ग्रहण गर्न योग्य धन प्राप्त गरौं।

[सूक्त – १२]

**ऋषि** – विश्वामित्र गाथिन। **देवता** – इन्द्र अग्नि। **छन्द** – गायत्री।

**इन्द्राग्नी आ गतं सुतं गीर्भिर्नभो वरेण्यम्। अस्य पातं धियेषिता ॥१॥**
हे इन्द्र र अग्निदेव ! हाम्रा स्तुतिले प्रभावित भएर आकाशबाट असल सोमरस बर्सेको छ। हाम्रो भक्तिभाव स्वीकार गर्दै तिमीहरू यो सोमरस पान गर।

**इन्द्राग्नी जरितुः सचा यज्ञो जिगाति चेतनः। अया पातमिमं सुतम् ॥२॥**

हे इन्द्र र अग्निदेव ! स्तुति गर्नेहरूका लागि तिमीहरू सहायक बन। स्तुति गरेर बोलाइएका तिमीहरू स्फुर्तिदायक र यज्ञको साधनजस्तो सोमरस पान गर।

**इन्द्रमग्निं कविच्छदा यज्ञस्य जूत्या वृणे। ता सोमस्येह तृम्पताम् ॥३॥**

हे इन्द्र र अग्निदेव ! यज्ञीय प्रेरणाले स्तुति गर्नेहरूका लागि योग्य फल प्रदान गर्ने हुनाले हामी पूजा गर्दछौं। तिमीहरू दुवै यस यज्ञमा सोमरस पान गरेर सन्तुष्ट होओ।

**तोशा वृत्रहणा हुवे सजित्वानापराजिता। इन्द्राग्नी वाजसातमा ॥४॥**

दुष्ट र दुराचारी शत्रु नाश गरेर सधैं युद्धमा विजय प्राप्त गर्ने, अपराजित, साधकलाई मनग्गे वैभव प्रदान गर्ने इन्द्र र अग्निदेवलाई हामी सधैं वन्दना गर्दछौं।

**प्र वामर्चन्त्युक्थिनो नीथाविदो जरितारः। इन्द्राग्नी इष आ वृणे ॥५॥**

हे इन्द्र र अग्निदेव ! वेदपाठ गर्नेले तिमीहरूलाई प्रार्थना गर्दछन्। सामवेद गाउनेहरू तिमीहरूको गुण गाउँछन् र अन्न प्राप्त गर्नका लागि हामी पनि स्तुति गर्दछौं।

**इन्द्राग्नी नवतिं पुरो दासपत्नीरधूनुतम्। साकमेकेन कर्मणा ॥६॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरू दुवैले संयुक्त भएर शत्रुका नब्बे सहर र उनको विभूति एकै पटकको आक्रमणमा एकै समयमा कम्पित गरायौ।

**इन्द्राग्नी अपसस्पर्युप प्र यन्ति धीतयः। ऋतस्य पथ्या३ अनु ॥७॥**

हे इन्द्र र अग्निदेव ! असल कर्म गर्ने मानिसहरू सत्यको बाटो पहिल्याउँदै सधैंभरि अगाडि बढ्दछन्।

**इन्द्राग्नी तविषाणि वां सधस्थानि प्रयांसि च। युवोरप्तूर्यं हितम् ॥८॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरूको बल र अन्न संयुक्त रूपमा रहन्छन्। तिमीहरूको बल शुभ कर्मतर्फ प्रेरित गर्ने खालको छ।

**इन्द्राग्नी रोचना दिवः परि वाजेषु भूषथः। तद्वां चेति प्र वीर्यम् ॥९॥**

हे इन्द्र र अग्निदेव ! दिव्य गुणले आलोकित तिमीहरू सङ्घर्षमा सफल भएर शोभायमान छौ। यो तिमीहरूका शौर्यको परिचय हो।

[सूक्त - १३]

ऋषि - ऋषभ वैश्वामित्र। देवता - अग्नि। छन्द - अनुष्टुप्।

**प्र वो देवायाग्नये बर्हिष्ठमर्चास्मै।**
**गमद्देवेभिरा स नो यजिष्ठो बर्हिरा सदत् ॥१॥**

हे स्तोताहरू हो ! तिमीहरू अग्निदेवका लागि उत्तम स्तुति गर। उनी देवतासँगै हामीकहाँ आऊन् र यजनीय अग्निदेव हाम्रा यस यज्ञमा कुशाका आसनमा बसून्।

**ऋतावा यस्य रोदसी दक्षं सचन्त ऊतयः।**
**हविष्मन्तस्तमीळते तं सनिष्यन्तोऽवसे ॥२॥**

द्यावापृथिवी जुन देवताका अधीनमा छन्, रक्षक देवताहरू जुन देवताका बलले पोसिन्छन्, धनको रहर गर्ने, सत्यवान्, हविदाता यजमानहरू आफ्नो संरक्षणका लागि उनै अग्निदेवको स्तुति गर्दछन्।

**स यन्ता विप्र एषां स यज्ञानामथा हि षः।**
**अग्निं तं वो दुवस्यत दाता यो वनिता मघम् ॥३॥**

मेधावान् अग्निदेव यजमानका नियन्ता हुन्। उनी यज्ञका पनि नियन्ता हुन्। ऐश्वर्य प्रदान गर्ने अग्निदेव धन प्रदान गर्दछन्। त्यसैले ऋत्विक्हरू हो ! तिमीहरू तिनै अग्निदेवको सेवासुसार गर।

**स नः शर्माणि वीतयेऽग्निर्यच्छतु शन्तमा।**
**यतो नः प्रुष्णवद्वसु दिवि क्षितिभ्यो अप्स्वा ॥४॥**

अग्निदेव हाम्रो रक्षाका लागि उपयोगी र शान्तिदायी आवास प्रदान गरून्। द्युलोक, अन्तरिक्ष र पृथ्वीमा जताततै व्याप्त रहेर पुष्टि प्रदान गर्ने वैभव हामीलाई प्राप्त होस्।

दीदिवांसमपूर्व्यं वस्वीभिरस्य धीतिभिः ।
ऋक्वाणो अग्निमिन्धते होतारं विश्पतिं विशाम् ॥५॥

स्तोताहरू देदीप्यमान्, प्रत्येक क्षणका नवीन, देवतालाई आह्वान गर्ने, प्रजाका पालक अग्निदेवलाई असल स्तुतिले प्रदीप्त गराउँछन् ।

उत नो ब्रह्मन्नविष उक्थेषु देवहूतमः ।
शं नः शोचा मरुद्वृधोऽग्ने सहस्रसातमः ॥६॥

हे अग्निदेव ! स्तुति गर्दाका समयमा हाम्रो रक्षा गर। हे देवतालाई बोलाउने ! तिमी मन्त्रको उच्चारण गर्दा हाम्रो रक्षा गर। सहस्रौंका धनदाता तिमी मरुत्‌हरूबाट प्रवर्धित हुन्छौ। तिमी हाम्रो सुख बढाइदेऊ।

नू नो रास्व सहस्रवत्तोकवत्पुष्टिमद्वसु ।
द्युमदग्ने सुवीर्यं वर्षिष्ठमनुपक्षितम् ॥७॥

हे अग्निदेव ! हामीलाई तिमी पुत्रपौत्रादिसहित पुष्टिकारक, दीप्तिमान्, तेजस्वी, उत्कृष्टतम, अक्षय र सहस्र सङ्ख्यक धन प्रदान गर।

[सूक्त - १४]

ऋषि – ऋषभ वैश्वामित्र । देवता – अग्नि । छन्द – त्रिष्टुप् ।

आ होता मन्द्रो विदथान्यस्थात्सत्यो यज्वा कवितमः स वेधाः ।
विद्युद्रथः सहसस्पुत्रो अग्निः शोचिष्केशः पृथिव्यां पाजो अश्रेत् ॥१॥

देवताहरूलाई आह्वान गर्ने, सुखदायक, सत्यको पालना गर्ने, मेधावीहरूमा श्रेष्ठ, यज्ञकारी, विधाताजस्ता अग्निदेव हाम्रा यज्ञमा आई बसिदिऊन्। चम्किलो रथमा बसेका, टल्कने केश भएका, बलका पुत्र अग्निदेवले पृथ्वीमा प्रभाव प्रकट गर्छन्।

अयामि ते नमउक्तिं जुषस्व ऋतावस्तुभ्यं चेतते सहस्वः ।
विद्वाँ आ वक्षि विदुषो नि षत्सि मध्य आ बर्हिरूतये यजत्र ॥२॥

हे यज्ञसम्पादक अग्निदेव ! हामी नमस्कारपूर्वक तिम्रो स्तुति गर्दछौं। हे बलवान् र ज्ञानवान् ! तिमीलाई अर्पण गरेको स्तुति स्वीकार गर। तिमी विद्वान् छौ, त्यसैले विद्वान् देवतालाई आफूसँगै ल्याऊ। हाम्रो संरक्षणका लागि तिमी यज्ञशालामा ओछ्याइएका कुशका आसनमा बस।

द्रवतां त उषसा वाजयन्ती अग्ने वातस्य पथ्याभिरच्छ ।
यत्सीमञ्जन्ति पूर्व्यं हविर्भिरा वन्धुरेव तस्थतुर्दुरोणे ॥३॥

हे अग्निदेव ! अन्नकी धनी उषा र रात्रि, तिम्रै लागि हिँड्दछन्। तिमी वायुमार्गबाट आऊ। पुराना ऋत्विक्‌हरू तिमीलाई हव्य आदिले सेचन गर्दछन्। एउटै जुवामा नारिएका उषा र रात्रि हाम्रा घरमा स्थित होऊन्।

मित्रश्च तुभ्यं वरुणः सहस्वोऽग्ने विश्वे मरुतः सुम्नमर्चन् ।
यच्छोचिषा सहसस्पुत्र तिष्ठा अभि क्षितीः प्रथयन्त्सूर्यो नॄन् ॥४॥

हे बलसम्पन्न अग्निदेव ! मित्र, वरुण र सम्पूर्ण मरुत्‌हरू तिम्रै लागि स्तुति गर्दछन्। हे बलका पुत्र अग्निदेव ! सूर्यजस्तै तिमी पनि मानिसलाई महानताको बाटो देखाउने रश्मि विस्तृत गराएर आफ्नो तेजले स्थित होऊ।

वयं ते अद्य ररिमा हि काममुत्तानहस्ता नमसोपसद्य ।
यजिष्ठेन मनसा यक्षि देवानस्त्रेधता मन्मना विप्रो अग्ने ॥५॥

हे अग्निदेव ! हामी कामनायुक्त याजकहरू हात माथि उठाएर तिमीलाई हव्य आदि अर्पण गर्दछौं। हे मेधावान् अग्निदेव ! हाम्रा हव्य आदिले सन्तुष्ट भएर तिमी आफ्ना असल मनले स्तोत्रद्वारा देवताहरूको यजन गर।

त्वद्धि पुत्र सहसो वि पूर्वीर्देवस्य यन्त्यूतयो वि वाजाः ।
त्वं देहि सहस्रिणं रयिं नोऽद्रोघेण वचसा सत्यमग्ने ॥६॥

हे बलका पुत्र अग्निदेव ! सनातनलाई रक्षा गर्ने तिम्रो किरण देवतातर्फ जान्छ र त्यसले अन्न आदि प्रदान गर्दछ। हे अग्निदेव ! हामीलाई द्रोहरहित, तेजोमय हजारौं किसिमका अक्षय धन प्रदान गर।

तुभ्यं दक्ष कविक्रतो यानीमा देव मर्तासो अध्वरे अकर्म।
त्वं विश्वस्य सुरथस्य बोधि सर्वं तदग्ने अमृत स्वदेह ॥७॥

हे बलवान्, मेधावान्, दीप्तिमान् अग्निदेव ! यज्ञमा तिम्रा लागि हामी मानिसले आफ्ना कर्मद्वारा हव्य आदि अर्पण गर्दछौं। हे अविनाशी अग्निदेव ! यज्ञमा चढाइएको हवि तिमी चाख। असल रथ भएका तिमी यजमानको रक्षा गर्नका लागि चेतन भइदेऊ।

[सूक्त - १५]

ऋषि - उत्कील कात्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

वि पाजसा पृथुना शोशुचानो बाधस्व द्विषो रक्षसो अमीवाः।
सुशर्मणो बृहतः शर्मणि स्यामग्नेरहं सुहवस्य प्रणीतौ ॥१॥

हे अग्निदेव ! तिमी आफ्नो बढ्दो तेजले डाह गर्ने शत्रुको बेहोरा भएका र राक्षसी वृत्ति भएकाहरूलाई बाधा हालिदेऊ। हे असल, सुखदायी, महान्, सुविख्यात अग्निदेव ! हामीलाई तिम्रै आश्रयमा रहन मन लाग्छ।

त्वं नो अस्या उषसो व्युष्टौ त्वं सूर उदिते बोधि गोपाः।
जन्मेव नित्यं तनयं जुषस्व स्तोमं मे अग्ने तन्वा सुजात ॥२॥

हे अग्निदेव ! उषा प्रकट हुँदा र सूर्य उदाउँदा हाम्रो संरक्षणका लागि चेतन होऊ। तिमी आफैं उत्पन्न हुने भए पनि पिताले छोराछोरी काखमा लिएझैं हाम्रो स्तोत्र स्वीकार गर।

त्वं नृचक्षा वृषभानु पूर्वीः कृष्णास्वग्ने अरुषो वि भाहि।
वसो नेषि च पर्षि चात्यंहः कृधी नो राय उशिजो यविष्ठ ॥३॥

हे बलशाली अग्निदेव ! तिमी मानिसका सबै कर्मका ज्ञाता छौ। अँध्यारा रातमा तिमी अझै बढी उज्यालिन्छौ। तिम्रो ज्वालो फिंजिन्छ। हे आश्रयदाता अग्निदेव ! हामीलाई दुःख र पापबाट बचाऊ। हे अत्यन्त युवा अग्निदेव ! हामीलाई ऐश्वर्यले सम्पन्न गराऊ।

अषाळहो अग्ने वृषभो दिदीहि पुरो विश्वाः सौभगा सञ्जिगीवान्।
यज्ञस्य नेता प्रथमस्य पायोर्जातवेदो बृहतः सुप्रणीते ॥४॥

हे अग्निदेव ! तिमी अपराजेय र बलशाली छौ। तिमी शत्रुका सहर र धन जितेर आफ्ना दीप्तिले सर्वत्र व्याप्त छौ। हे उत्तम प्रेरक र सबै संसारको ज्ञान भएका अग्निदेव ! तिमी महान् आश्रयदाता र यज्ञका प्रथम सम्पादनकर्ता हौ।

अच्छिद्रा शर्म जरितः पुरूणि देवाँ अच्छा दीद्यानः सुमेधाः।
रथो न सस्निरभि वाजमग्ने त्वं रोदसी नः सुमेके ॥५॥

हे स्तुति गर्न योग्य अग्निदेव ! तिमी उत्तम, मेधासम्पन्न र आफ्ना तेजले प्रकाशित छौ। देवताहरूका लागि सुखका सबै कर्महरू राम्ररी सम्पन्न गराऊ। रथजस्तिकै वेगले यात्रा गरेर देवताहरूका लागि हव्य वहन गर र सम्पूर्ण द्यावापृथिवीलाई प्रकाशित गर।

प्र पीपय वृषभ जिन्व वाजानग्ने त्वं रोदसी नः सुदोघे।
देवेभिर्देव सुरुचा रुचानो मा नो मर्तस्य दुर्मतिः परि ष्ठात् ॥६॥

हे चाहिएको कुरो बर्साइदिन सक्ने अग्निदेव ! हामीलाई पूर्णता प्रदान गर र विभिन्न अन्नले सम्पन्न गराऊ। उत्तम दीप्तिले दीप्तिमान् भएर देवताहरूसँग द्यावापृथिवीलाई दोहन गर्न योग्य बनाऊ। अन्य मानिसको दुर्बुद्धि हाम्रा नजिक नआओस्।

इळामग्ने पुरुदंसं सनिं गोः शश्वत्तमं हवमानाय साध।
स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥७॥

हे अग्निदेव ! तिमी यज्ञ आदि कार्यका लागि, अनेकौं सत्कर्मका लागि र गाईको पोषणका लागि उचित भूमि हामीलाई प्रदान गर। हाम्रा पुत्रले सन्तान बढाऊन्। तिम्रो सद्बुद्धि हामीलाई पनि प्राप्त होस्।

[सूक्त - १६]

ऋषि - उत्कील कात्य। देवता - अग्नि। छन्द - बार्हत प्रगाथ।

**अयमग्निः सुवीर्यस्येशे महः सौभगस्य।**
**राय ईशे स्वपत्यस्य गोमत ईशे वृत्रहथानाम् ॥१॥**

अग्निदेव महान् पुरुषार्थ, सौभाग्य, धन, ऐश्वर्य र असल सन्तानका अधिपति हुन्। गाईका रक्षक र वृत्रको नाश गराउने स्वामी उनै हुन्।

**इमं नरो मरुतः सश्चता वृधं यस्मिन्रायः शेवृधासः।**
**अभि ये सन्ति पृतनासु दूढ्यो विश्वाहा शत्रुमादभुः ॥२॥**

हे मरुत्हरू हो ! तिमीहरू सङ्ग्राममा पराजित नभएर सधैं शत्रु संहार गर्दछौ, मानिसलाई उन्नति गराउने अग्निदेवको सेवा गर्दछौ। अग्निका अगाडि चारैतिर सुखका साधनरूपी धन र ऐश्वर्यहरू रहेका छन्।

**स त्वं नो रायः शिशीहि मीढ्वो अग्ने सुवीर्यस्य।**
**तुविद्युम्न वर्षिष्ठस्य प्रजावतोऽनमीवस्य शुष्मिणः ॥३॥**

मनग्गे धन सम्पन्न, सुखका साधनले सम्पन्न हे अग्निदेव ! हामीलाई धनले सम्पन्न गराऊ। हाम्रा सन्तान असल होऊन्, तिनलाई आरोग्यप्रद बलिया र तेजस्वी अन्नले पुष्ट गराऊ।

**चक्रिर्यो विश्वा भुवनाभि सासहिश्चक्रिर्देवेष्वा दुवः।**
**आ देवेषु यतत आ सुवीर्य आ शंस उत नृणाम् ॥४॥**

संसारका कर्म सम्पादन गर्ने अग्निदेव सबै लोकमा व्याप्त रहेका छन्। काममा ज्यादै सिपालु अग्निदेव हव्य आदि वहन गरेर देवतासमक्ष जान्छन् र देवतालाई यज्ञमा लिएर आउँछन्। मानिसबाट प्रशंसित भएर उनलाई उत्तम पराक्रमले सम्पन्न गराउँछन्।

**मा नो अग्नेऽमतये मावीरतायै रीरधः।**
**मागोतायै सहसस्पुत्र मा निदेऽप द्वेषांस्या कृधि ॥५॥**

हे बलका पुत्र अग्निदेव ! दुर्बुद्धिका अधिकारभित्र हामीलाई नपारिदेऊ। हामीलाई वीर पुत्रविनाका नबनाइदेऊ, गाई आदि पशुविनाका हामीलाई नबनाऊ, हामीलाई निन्दित हुन नदेऊ र त्यसका साथै हामीलाई द्वेषको भावनाबाट मुक्त बनाइदेऊ।

**शग्धि वाजस्य सुभग प्रजावतोऽग्ने बृहतो अध्वरे।**
**सं राया भूयसा सृज मयोभुना तुविद्युम्न यशस्वता ॥६॥**

हे उत्तम धनसम्पन्न अग्निदेव ! हामीहरू यज्ञलाई चाहिने धन, मनग्गे सन्तान र अन्नरूपी धनका अधिपति होऔं। हे महान् धनले युक्त अग्निदेव ! हामीलाई सुखदायक, यशवर्द्धक र प्रचुर ऐश्वर्य तिमी प्रदान गर।

[सूक्त - १७]

ऋषि - कत वैश्वामित्र। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**समिध्यमानः प्रथमानु धर्मा समक्तुभिरज्यते विश्ववारः।**
**शोचिष्केशो घृतनिर्णिक्पावकः सुयज्ञो अग्निर्यजथाय देवान् ॥१॥**

धर्म धारण गर्ने, ज्वालारूपी कपाल भएका, सबैले स्वीकार गर्न योग्य, समिधाले दन्किने, घिउले उर्लिने, पवित्रता प्रदान गर्ने र यज्ञका राम्रा सञ्चालक अग्निदेव हुन्। यज्ञका थालनीमै प्रज्वलित भएर देवताको यजन गर्न घिउले बेस्सरी सिञ्चित हुन्छन्।

**यथायजो होत्रमग्ने पृथिव्या यथा दिवो जातवेदश्चिकित्वान्।**
**एवानेन हविषा यक्षि देवान्मनुष्वद्यज्ञं प्र तिरेममद्य ॥२॥**

हे अग्निदेव ! पृथ्वी र आकाशलाई तिमीले हव्य प्रदान गरेझैं संसारका सबै कुराको जानकारी राखेका छौ। हे अग्निदेव ! हाम्रा यस हव्य पदार्थले सम्पूर्ण देवताको यजन गर। मनुको यज्ञजस्तै हाम्रो यज्ञ पनि पूर्ण सफल गराऊ।

**त्रीण्यायूंषि तव जातवेदस्तिस्र आजानीरुषसस्ते अग्ने।**
**ताभिर्देवानामवो यक्षि विद्वानथा भव यजमानाय शं योः ॥३॥**

हे ज्ञानका प्रतिमूर्ति अग्निदेव ! तिम्रो अन्न तीन किसिमको छ। तीन उषाहरू तिम्रा माता हुन्। तिनीहरूबाटै तिमी देवताको यजन गर। तिमीले सबैलाई जानेका छौ, त्यसैले यजमानलाई सुख र हित गर्छौ।

**अग्निं सुदीतिं सुदृशं गृणन्तो नमस्यामस्त्वेड्यं जातवेदः।**
**त्वां दूतमरतिं हव्यवाहं देवा अकृण्वन्नमृतस्य नाभिम् ॥४॥**

सबै कुराको ज्ञान भएका हे अग्निदेव ! तिमी दीप्तिमान् हुनाले दर्शनीय र स्तुत्य छौ। हामी नमस्कारपूर्वक तिम्रो स्तुति गर्दछौं। हे गमनशील ज्वालाले युक्त र हव्य वहन गर्ने अग्निदेव ! देवताहरूले तिमीलाई दूतका रूपमा प्रतिष्ठित गरे, अमृतको केन्द्र माने र सोमरस चाखे।

**यस्त्वद्धोता पूर्वो अग्ने यजीयान्द्विता च सत्ता स्वधया च शम्भुः।**
**तस्यानु धर्म प्र यजा चिकित्वोऽथा नो धा अध्वरं देववीतौ ॥५॥**

हे अग्निदेव ! पहिलेका स्वधासितै उत्तम र मध्यम स्थानमा बसेका दुई स्तोताहरू सुखी भए। उनीहरूकै सिको गरेर तिमी पनि यजन गर। त्यसपछि देवताहरूको खुसीका लागि हाम्रो यो यज्ञ धारण गर।

[सूक्त - १८]

**ऋषि** - कत वैश्वामित्र। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

**भवा नो अग्ने सुमना उपेतौ सखेव सख्ये पितरेव साधुः।**
**पुरुद्रुहो हि क्षितयो जनानां प्रति प्रतीचीर्दहतादरातीः ॥१॥**

हे अग्निदेव ! एउटा मित्रप्रति अर्को मित्र र छोराछोरीप्रति आमाबाबु हितैषि भएझैं तिमी प्रसन्नताका साथ हाम्रा हितैषि बन। यो संसारमा मान्छेप्रति मान्छे नै डाहा र शत्रुता गर्दछन्। हाम्रा विरुद्ध आचरण गर्ने शत्रुका विपक्षमा रहेर तिनलाई भस्म गराऊ।

**तपो ष्वग्ने अन्तराँ अमित्रान् तपा शंसमररुषः परस्य।**
**तपो वसो चिकितानो अचित्तान्वि ते तिष्ठन्तामजरा अयासः ॥२॥**

हे अग्निदेव ! हाम्रा नजिकैको शत्रु सताऊ। हव्य प्रदान नगर्ने र अर्काको निन्दा गर्नेलाई सताऊ। हे आश्रयदाता र विद्वान् अग्निदेव ! चञ्चले चित्त हुनेलाई सताऊ। तिम्रो अजर किरण निर्बाध गतिले चारैतिर फैलियोस्।

**इध्मेनाग्न इच्छमानो घृतेन जुहोमि हव्यं तरसे बलाय।**
**यावदीशे ब्रह्मणा वन्दमान इमां धियं शतसेयाय देवीम् ॥३॥**

हे अग्निदेव ! हामी असल भावनासहित तिम्रो वेग र बलका लागि समिधा, घिउ र हविष्यान्न प्रदान गर्दछौं। स्तोत्रले तिम्रो स्तुति गर्दै धनमाथि हामी अधिकार गर्न पाऔं। हामीलाई अक्षय धन प्रदान गर्नका लागि तिमी हाम्रा स्तुतिलाई दिव्य बनाइदेऊ।

**उच्छोचिषा सहसस्पुत्र स्तुतो बृहद्वयः शशमानेषु धेहि।**
**रेवदग्ने विश्वामित्रेषु शं योर्मर्मृज्मा ते तन्वं भूरि कृत्वः ॥४॥**

हे बलका पुत्र अग्निदेव ! आफ्ना तेजले प्रकाशसम्पन्न होऊ। प्रशंसक विश्वामित्रका वंशजले स्तुति गर्दा अपार धनधान्य प्रदान गर। उनीहरूलाई आरोग्य र निर्भयता प्रदान गर। यज्ञ कर्म सम्पन्न गराउने हे अग्निदेव ! तिमीलाई हामी बारम्बार शोधन गर्दछौं।

**कृधि रत्नं सुसनितर्धनानां स घेदग्ने भवसि यत्समिद्धः।**
**स्तोतुर्दुरोणे सुभगस्य रेवत्सृप्रा करस्ना दधिषे वपूंषि ॥५॥**

हे उत्तम दान गर्ने स्वभाव भएका अग्निदेव ! हामीलाई सबैभन्दा असल धन दान गर। राम्रोसँग प्रदीप्त भएर याजकलाई धन प्रदान गर्दछौ। समृद्धिशाली स्तोताहरूलाई अपार धनको वैभव प्रदान गर्नका लागि तिमी आफ्ना राम्रो तेजले सम्पन्न हात अगाडि सार।

[सूक्त - १९]

**ऋषि** - गाथी कौशिक। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

**अग्निं होतारं प्र वृणे मियेधे गृत्सं कविं विश्वविदममूरम्।**
**स नो यक्षद्देवताता यजीयान्राये वाजाय वनते मघानि ॥१॥**

स्तुति गर्दै देवताहरूलाई आह्वान गर्ने, मेधासम्पन्न, ज्ञानवान् अग्निदेवलाई हामी यज्ञमा विशेष रूपले वरण गर्दछौं। पूज्य अग्निदेवले हाम्रा लागि देवताको यजन गरून्। हामीलाई मनग्गे धनधान्य प्रदान गर्नका लागि हाम्रो हवि स्वीकार गरून्।

प्र ते अग्ने हविष्मतीमियर्म्यच्छा सुद्युम्नां रातिनीं घृताचीम्।
प्रदक्षिणिद्देवतातिमुराणः सं रातिभिर्वसुभिर्यज्ञमश्रेत् ॥२॥

हे अग्निदेव ! हामी घिउ आदि हव्य पदार्थले भरिएका पात्र सधैं तिमीतिर पठाउँछौं। देवतालाई आह्वान गर्दै हाम्रो वैभव बढाउने रहरले यज्ञ स्थलमा उपस्थित भइदेऊ।

स तेजीयसा मनसा त्वोत उत शिक्ष स्वपत्यस्य शिक्षोः।
अग्ने रायो नृतमस्य प्रभूतौ भूयाम ते सुष्टुतयश्च वस्वः ॥३॥

हे अग्निदेव ! तिमी जसको रक्षा गर्दछौ, त्यसको मन अति नै तेजस्वी हुन्छ। त्यसलाई तिमी असल धन र सन्तान प्रदान गर। धन प्रदान गर्ने, असल काममा प्रेरित गर्ने हे अग्निदेव ! हामी तिम्रै विपुल ऐश्वर्यका संरक्षणमा निवास गरौं र तिम्रै स्तुति गर्दै धनका अधिपति बनौं।

भूरीणि हि त्वे दधिरे अनीकाग्ने देवस्य यज्यवो जनासः।
स आ वह देवतातिं यविष्ठ शर्धो यदद्य दिव्यं यजासि ॥४॥

हे अग्निदेव ! देवताको पूजा यज्ञ आदि गर्ने मानिसले तिमीभित्र मनग्गे दीप्ति उत्पन्न गरेका छन्। तिमी सधैं तरुण रहेर यज्ञमा देवताहरूका दिव्य तेजको पूजा गर्दछौ। त्यसैले हाम्रा यस यज्ञमा उनीहरूलाई साथमा लिएर आऊ।

यत्त्वा होतारमनजन्मियेधे निषदयन्तो यजथाय देवाः।
स त्वं नो अग्नेऽवितेह बोध्यधि श्रवांसि धेहि नस्तनूषु ॥५॥

देवतालाई निम्त्याउने हे अग्निदेव ! यज्ञका लागि बसेका दीप्तिमान् ऋत्विकहरू तिमीलाई प्रतिष्ठित गराएर घिउले सेचन गर्दछन्। हाम्रा यज्ञमा सचेत भएर हामीलाई तिमी रक्षा गर। हाम्रा पुत्रहरूलाई तिमी मनग्गे मात्रामा धनधान्य प्रदान गर।

[सूक्त - २०]

ऋषि - गाथी कौशिक। देवता - अग्नि विश्वेदेवा। छन्द - त्रिष्टुप्।

अग्निमुषसमश्विना दधिक्रां व्युष्टिषु हवते वह्निरुक्थैः।
सुज्योतिषो नः शृण्वन्तु देवाः सजोषसो अध्वरं वावशानाः ॥१॥

यज्ञमा चढाइएको आहुति धारण गर्ने अग्निदेव, उषा, अश्विनीकुमारहरू र दधिक्रा आदि देवतालाई हामी स्तुति वचनले आह्वान गर्दछौं। उत्तम दीप्तिमान् र प्रेमले युक्त रहने देवताहरू यस यज्ञको सफलताको कामना गर्दै हाम्रो स्तुति सुनून्।

अग्ने त्री ते वाजिना त्री षधस्था तिस्रस्ते जिह्वा ऋतजात पूर्वीः।
तिस्र उ ते तन्वो देववातास्ताभिर्नः पाहि गिरो अप्रयुच्छन् ॥२॥

हे अग्निदेव ! तिम्रा तीन किसिमका अन्न र तीनै किसिमका निवासहरू छन्। हे यज्ञबाट उत्पन्न अग्निदेव ! तिम्रो पुरातन जिब्रोहरू पनि तीन किसिमको नै छ। तिम्रो तीन शरीर देवताहरूले खोज्ने खालको छ। तिमी प्रमादरहित भएर आफ्ना शरीरले हाम्रा स्तोत्रको रक्षा गर।

अग्ने भूरीणि तव जातवेदो देव स्वधावोऽमृतीस्य नाम।
याश्च माया मायिनां विश्वमिन्व त्वे पूर्वीः सन्दधुः पृष्टबन्धो ॥३॥

प्रकाश, ज्ञान र ऐश्वर्यसम्पन्न भईकन अविनाशी रूपमा रहेका हे अग्निदेव ! देवताहरूले तिमीलाई अनेकौं विभूतिले सम्पन्न बनाएका छन्। तिमी जगत्‌लाई आनन्द प्रदान गर्ने र मन परेको फल प्रदान गर्ने हौ। हे अग्निदेव ! तिमी मायावीहरूको परम्परागत सबै माया राम्ररी जान्ने हुनाले तिनलाई धारण गर्दछौ।

अग्निर्नेता भग इव क्षितीनां दैवीनां देव ऋतुपा ऋतावा।
स वृत्रहा सनयो विश्ववेदाः पर्षद्विश्वाति दुरिता गृणन्तम् ॥४॥

ऋतुको सञ्चालन गर्ने ऐश्वर्यशाली सूर्यदेवजस्तै अग्निदेव मानिस र देवताको नेतृत्व गर्दछन्। यिनी यज्ञ आदि सत्कर्म गर्ने, वृत्रको नाश गर्ने, सनातन, सर्वज्ञ र दीप्तिमान् छन्। त्यस्ता अग्निदेवले हामी स्तोताहरू सबैलाई पापबाट मुक्त गराऊन्।

दधिक्रामग्निमुषसं च देवीं बृहस्पतिं सवितारं च देवम्।
अश्विना मित्रावरुणा भगं च वसून्रुद्रौं आदित्याँ इह हुवे ॥५॥

दधिक्रा, अग्नि, दीप्तिमान् उषा, बृहस्पति, सवितादेव, अश्विनीकुमार, मित्र, वरुण, भगदेव, वसुहरू, रुद्र र आदित्यसित यज्ञमा उपस्थित हुनका लागि हामी प्रार्थना गर्छौं।

[सूक्त - २१]

ऋषि - गाथी कौशिक। देवता - अग्नि। छन्द - त्रिष्टुप् अनुष्टुप्।

**इमं नो यज्ञममृतेषु धेहीमा हव्या जातवेदो जुषस्व।**
**स्तोकानामग्ने मेदसो घृतस्य होतः प्राशान प्रथमो निषद्य ॥१॥**

हे संसारको ज्ञान भएका अग्निदेव ! हाम्रो यज्ञ अमर देवताहरूका लागि समर्पित गरिदेऊ। हामीले अर्पण गरेको हव्य पदार्थ सेवन गर। देवताहरूलाई आह्वान गर्ने हे अग्निदेव ! तिमी यज्ञमा बसेर सबैभन्दा पहिले हवि र घिउको अंश भक्षण गर।

**घृतवन्तः पावक ते स्तोकाः श्चोतन्ति मेदसः।**
**स्वधर्मन्देववीतये श्रेष्ठं नो धेहि वार्यम् ॥२॥**

पवित्रता प्रदान गर्ने हे अग्निदेव ! यस यज्ञमा घिउले युक्त हविष्यान्न तिमी र देवताले सेवन गर्नका लागि अर्पित गर्दै छौं। हामीलाई असल र काम लाग्ने धन प्रदान गर।

**तुभ्यं स्तोका घृतश्चुतोऽग्ने विप्राय सन्त्य।**
**ऋषिः श्रेष्ठः समिध्यसे यज्ञस्य प्राविता भव ॥३॥**

ऋत्विक्हरूबाट सेवित, मेधासम्पन्न हे अग्निदेव ! तिम्रा लागि खस्न लागेको घिउको थोपो अर्पण गर्दछौं। तिमी सबै कुराको पूरा ज्ञानले सम्पन्न घिउले राम्ररी बल्दछौ। हाम्रो यज्ञ सम्पन्न गराउने तिमी नै हौ।

**तुभ्यं श्चोतन्त्यध्रिगो शचीवः स्तोकासो अग्ने मेदसो घृतस्य।**
**कविशस्तो बृहता भानुनागा हव्या जुषस्व मेधिर ॥४॥**

निरन्तरको यात्रा गर्ने र शक्तिले सम्पन्न हे अग्निदेव ! तिम्रा लागि हविष्यको भाग र घिउका थोपाहरू अर्पित हुन्छन्। हे मेधावान् अग्निदेव ! मेधावीहरूले तिम्रो प्रशंसा गरेपछि आफ्नो विस्तृत तेज हाम्रा लागि अनुकूल गराऊ र हाम्रो हव्य ग्रहण गर।

**ओजिष्ठं ते मध्यतो मेद उद्भृतं प्र ते वयं ददामहे।**
**श्चोतन्ति ते वसो स्तोका अधि त्वचि प्रति तान्देवशो विहि ॥५॥**

हे अग्निदेव ! तिम्रा लागि घिउले युक्त असल हव्य प्रदान गर्दछौं। हे आश्रयदाता अग्निदेव ! तिम्रा ज्वालाका बीचमा घिउका असङ्ख्य धारा समर्पित गरिंदै छन्।

[सूक्त - २२]

ऋषि - गाथी कौशिक। देवता - अग्नि। छन्द - त्रिष्टुप् अनुष्टुप्।

**अयं सो अग्निर्यस्मिन्त्सोममिन्द्रः सुतं दधे जठरे वावशानः।**
**सहस्रिणं वाजमत्यं न सप्तिं ससवान्त्सन्त्स्तूयसे जातवेदः ॥१॥**

सोमको आशा गर्ने इन्द्रदेवले पेलेर तयार गरेको सोमरस जुन पेटमा धारण गरेका थिए, त्यो पेट भनेको सबै विषयको ज्ञान भएका अग्निदेव नै हुन्। हे जातवेदा अग्निदेव ! विविध रूपमा अश्वजस्तै वेगवान् हविष्यान्न तिमी सेवन गर्दछौ र सबैले गरेको स्तुति सुन्दछौ।

**अग्ने यत्ते दिवि वर्चः पृथिव्यां यदोषधीष्वप्स्वा यजत्र।**
**येनान्तरिक्षमुर्वाततन्थ त्वेषः स भानुरर्णवो नृचक्षाः ॥२॥**

हे यज्ञरूपी अग्निदेव ! तिम्रा तेजले स्वर्गलोक ढाकेको छ। पृथ्वीमा त्यो तेज औषधिमा छ र विद्युत्का रूपले जलमा व्याप्त भएर अन्तरिक्षलोक ढाकेको छ। हे सर्वत्र गतिमान्, संसारलाई उज्यालो दिने अग्निदेव ! तिम्रा उसै दिव्य तेजका कारण मानिसले सबै राम्रा र नराम्रा काम देख्दछन्।

**अग्ने दिवो अर्णमच्छा जिगास्यच्छा देवाँ ऊचिषे धिष्ण्या ये।**
**या रोचने परस्तात्सूर्यस्य याश्चावस्तादुपतिष्ठन्त आपः ॥३॥**

हे अग्निदेव ! दिव्यलोकको अमृतरूपी जल तिमी विशेष ढङ्गले धारण गर्दछौ। बुद्धि प्रेरित गर्ने प्राणरूपी देवताका अगाडि तिमी गतिशील छौ। प्रकाशमान सूर्यमण्डलमा स्थित सूर्यका अगाडिको जल यसका तल छ। सबै जल तिमीमा विराजमान होस्।

पुरीष्यासो अग्नयः प्रावणेभिः सजोषसः ।
जुषन्तां यज्ञमद्रुहोऽनमीवा इषो महीः ॥४॥

प्रजाको पालन गर्ने, समान विचार भएकाहरूमा स्नेहयुक्त रहने, द्रोहको भावनारहित अग्निले यज्ञमा आरोग्यप्रद वनौषधिले युक्त हविष्य पर्याप्त मात्रामा ग्रहण गरून्।

इडामग्ने पुरुदंसं सनिं गोः शश्वत्तमं हवमानाय साध ।
स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥५॥

हे अग्निदेव ! तिमी यज्ञ आदि कार्यका लागि, अनेकौं सत्कर्मका लागि र गाईको पोषणका लागि उचित भूमि हामीलाई प्रदान गर। हाम्रा पुत्रले सन्तान बढाऊन्। तिम्रो सद्‌बुद्धि हामीलाई पनि प्राप्त होस्।

[सूक्त - २३]

ऋषि - देवश्रवा देववात। देवता - अग्नि। छन्द - त्रिष्टुप् सतोबृहती।

निर्मथितः सुधित आ सधस्थे युवा कविरध्वरस्य प्रणेता ।
जूर्यत्स्वग्निरजरो वनेष्वत्रा दधे अमृतं जातवेदाः ॥१॥

मन्थनले प्रकट गरेर यजमानका घरमा स्थापित अग्निदेव सर्वदा युवा, यज्ञका प्रणेता, मेधावान् र सर्वज्ञ छन्। विशाल वनक्षेत्र जलाइसक्ता पनि उनी स्वयं अजर छन्। यिनै अग्निदेवले नै यज्ञमा अमृत धारण गर्दछन्।

अमन्थिष्टां भारता रेवदग्निं देवश्रवा देववातः सुदक्षम् ।
अग्ने वि पश्य बृहताभि रायेषां नो नेता भवतादनु द्यून् ॥२॥

भरतका पुत्र देवश्रवा र देववात यी दुवैले उत्तम सामर्थ्यशाली र विपुल धनले संयुक्त अग्निदेवलाई मन्थनद्वारा उत्पन्न गरेका हुन्। हे अग्निदेव ! कृपादृष्टि राखेर हामीलाई मनग्गे धन र प्रतिदिन प्रशस्त अन्न आदि प्राप्त गराऊ।

दश क्षिपः पूर्व्यं सीमजीजनन्त्सुजातं मातृषु प्रियम् ।
अग्निं स्तुहि दैववातं देवश्रवो यो जनानामसद्वशी ॥३॥

दस नङ्‌ग्रीले सधैंका परिचित अग्निदेवलाई उत्पन्न गराए। हे देवश्रवा ! अरणीरूपी माताहरूबाट गतिलोसँग उत्पन्न हुने देववातद्वारा मथित, सबैका प्रिय यी अग्निदेवको स्तुति गर। उनी स्तोताहरूकै वशमा रहने गरेका छन्।

नि त्वा दधे वर आ पृथिव्या इळायास्पदे सुदिनत्वे अह्नाम् ।
दृषद्वत्यां मानुष आपयायां सरस्वत्यां रेवदग्ने दिदीहि ॥४॥

हे अग्निदेव ! इलारूपी अन्नमयी पृथ्वीका उत्कृष्ट ठाउँमा असल दिनका शुभ साइतमा तिमीलाई विशेष रूपले स्थापित गराउँछौं। दृषद्वती, आपया र सरस्वतीका किनारमा रहने मानिसको घर धनले युक्त गराएर दीप्तिमान् होऊ।

इडामग्ने पुरुदंसं सनिं गोः शश्वत्तमं हवमानाय साध ।
स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥५॥

हे अग्निदेव ! तिमी यज्ञ आदि कार्यका लागि, अनेकौं सत्कर्मका लागि र गाईको पोषणका लागि उचित भूमि हामीलाई प्रदान गर। हाम्रा पुत्रले सन्तान बढाऊन्। तिम्रो सद्‌बुद्धि हामीलाई पनि प्राप्त होस्।

[सूक्त - २४]

ऋषि - विश्वामित्र गाथिन। देवता - अग्नि। छन्द - गायत्री अनुष्टुप्।

अग्ने सहस्व पृतना अभिमातीरपास्य । दुष्टरस्तरन्नरातीर्वर्चो धा यज्ञवाहसे ॥१॥

हे शत्रुले जित्न नसक्ने अग्निदेव ! शत्रुको सेना पराजित गर। आपद् निम्त्याउनेलाई पर हट्याऊ। तिमी आफ्ना शत्रुको सेना जितेर यज्ञ गर्ने यजमानलाई मनग्गे अन्न देऊ।

अग्न इळा समिध्यसे वीतिहोत्रो अमर्त्यः । जुषस्व सू नो अध्वरम् ॥२॥

हे अग्निदेव ! तिमी यज्ञसित प्रेम भएका र अविनाशी हौ। उत्तरका वेदीमा प्रज्वलित हुन्छौ। तिमी हाम्रो यज्ञ राम्ररी स्वीकार गर।

अग्ने द्युम्नेन जागृवे सहसः सूनवाहुत। एदं बर्हिः सदो मम ॥३॥
हे अग्निदेव ! तेजका कारणले तिमी सधैँभरि चेतन छौ। तिमी बलका पुत्र हौ र आदरपूर्वक आमन्त्रित गरिन्छौ। हाम्रा यज्ञमा उपस्थित भएर कुशका आसनमा बस।

अग्ने विश्वेभिरग्निभिर्देवेभिर्महया गिरः। यज्ञेषु य उ चायवः ॥४॥
हे अग्निदेव ! तिम्रा लागि यज्ञमा स्तुति गर्ने याजकको स्तुति महत्त्वपूर्ण भएर नै तिम्रो ज्वालो तेजस्वी हुन्छ।

अग्ने दा दाशुषे रयिं वीरवन्तं परीणसम्। शिशीहि नः सूनुमतः ॥५॥
हे अग्निदेव ! तिमी हविदातालाई वीर पुत्र र पर्याप्त धन प्रदान गर। हामी पुत्रपौत्रले सम्पन्न होऔँ। हामीलाई पनि तेजस्वी बनाऊ।

[सूक्त - २५]
ऋषि - विश्वामित्र। देवता - अग्नि। छन्द - विराट्।

अग्ने दिवः सूनुरसि प्रचेतास्तना पृथिव्या उत विश्ववेदाः।
ऋधग्देवाँ इह यजा चिकित्वः ॥१॥
सबै कुरो जान्ने, चेतनशील, आकाशका पुत्र हे अग्निदेव ! पृथ्वीलाई विस्तृत गराउँछौ। हे ज्ञानसम्पन्न अग्निदेव ! यज्ञमा विभिन्न देवताका निम्ति कार्य सम्पन्न गर।

अग्निः सनोति वीर्याणि विद्वान्त्सनोति वाजममृताय भूषन्।
स नो देवाँ एह वहा पुरुक्षो ॥२॥
विद्वान् अग्निदेवले उपासकहरूको क्षमता बढाउँछन्। उनी आफूलाई सिँगार्दै अमर देवतालाई हविष्यान्न प्रदान गर्दछन्। विभिन्न प्रकारका वैभवले सम्पन्न हे अग्निदेव ! हाम्रा लागि देवताहरूलाई यस यज्ञमा लिएर आऊ।

अग्निर्द्यावापृथिवी विश्वजन्य आ भाति देवी अमृते अमूरः।
क्षयन्वाजैः पुरुश्चन्द्रो नमोभिः ॥३॥
ज्ञानसम्पन्न, सबैका आश्रयस्थल, अत्यन्त तेजस्वी, बल र अन्नले युक्त हे अग्निदेव ! तिमी विश्व बनाउन सक्छौ, देदीप्यमान र अजरअमर छौ। तिमी द्युलोक र पृथिवीलाई प्रकट गराउँछौ।

अग्न इन्द्रश्च दाशुषो दुरोणे सुतावतो यज्ञमिहोप यातम्।
अमर्धन्ता सोमपेयाय देवा ॥४॥
हे अग्निदेव ! तिमी र इन्द्रदेव दुवै यज्ञका संरक्षक हौ। पेलेर तयार पारेको सोम प्रदान गर्ने यजमानका घरमा सोमपानका लागि आऊ।

अग्ने अपां समिध्यसे दुरोणे नित्यः सूनो सहसो जातवेदः।
सधस्थानि महयमान ऊती ॥५॥
बलका पुत्र, अविनाशी र सबै कुराको जानकारी भएका हे अग्निदेव ! आफ्ना संरक्षण शक्तिले प्राणीलाई आश्रय र कृपा प्रदान गरेर जलको स्थान अन्तरिक्षमा चम्किन्छौ।

[सूक्त - २६]
ऋषि - विश्वामित्र गाथिन। देवता - अग्नि। छन्द - जगती त्रिष्टुप्।

वैश्वानरं मनसाग्निं निचाय्या हविष्मन्तो अनुषत्यं स्वर्विदम्।
सुदानुं देवं रथिरं वसूयवो गीर्भी रण्वं कुशिकासो हवामहे ॥१॥
हामी कुशिक वंशीहरू धनका आशाले हव्य आदि प्रदान गर्दै देख्नमा राम्रा वैश्वानर अग्निदेवलाई स्तुति गर्दै बोलाउँछौँ। सत्यको मार्ग पछ्याउने, स्वर्गको सुख प्रदान गर्ने, उत्तम फल प्रदान गर्ने र सर्वत्र पुग्ने अग्निदेव नै हुन्।

तं शुभ्रमग्निमवसे हवामहे वैश्वानरं मातरिश्वानमुक्थ्यम्।
बृहस्पतिं मनुषो देवतातये विप्रं श्रोतारमतिथिं रघुष्यदम् ॥२॥
यजमानका यज्ञको रक्षा गर्नका लागि शुभ्र, अन्तरिक्षमा विद्युत्का रूपमा गतिशील, ऋचाद्वारा स्तुत्य, वाणीका अधीश्वर, मेधावी, श्रोता र अतिथिको रूपमा पूज्य तथा शीघ्र गमनको गतिले सम्पन्न वैश्वानर अग्निदेवलाई हामी बोलाउँछौँ।

अश्वो न क्रन्दञ्जनिभिः समिध्यते वैश्वानरः कुशिकेभिर्युगेयुगे।
स नो अग्निः सुवीर्यं स्वश्व्यं दधातु रत्नममृतेषु जागृविः ॥३॥
हिल्लिने घोडाको बछेडो माउबाट पालिएझैं वैश्वानर अग्निदेव कुशिक वंशीहरूबाट हुर्काइन्छन्। अमर देवताहरूमा सधैं जागरुक रहने यी अग्निदेवले हामीलाई असल किसिमका अश्व, पराक्रम, सामर्थ्य र रत्न आदि धन प्रदान गरून्।

प्र यन्तु वाजास्तविषीभिरग्नयः शुभे सम्मिश्लाः पृषतीरयुक्षत।
बृहदुक्षो मरुतो विश्ववेदसः प्र वेपयन्ति पर्वताँ अदाभ्याः ॥४॥
यज्ञबाट उत्पन्न शक्तिशाली धाराहरू असल उद्देश्यले अगाडि सर्दछन्। बलशाली मरुत्हरूका साथ मिलेर पृषतीलाई एकत्रित गरून्। सबै कुराको जानकारी भएका, अदम्य किसिमका मरुत्हरूले जलयुक्त पर्वतआकारका मेघलाई धर्काउँछन्।

अग्निश्रियो मरुतो विश्वकृष्टय आ त्वेषमुग्रमव ईमहे वयम्।
ते स्वानिनो रुद्रिया वर्षनिर्णिजः सिंहा न हेषक्रतवः सुदानवः ॥५॥
रुद्रका पुत्र मरुत्हरू अग्निदेवका आश्रित, विश्वलाई आकृष्ट गर्ने, ठूलो सोर गर्ने, जलको वर्षा गर्ने, सिंहजस्तै गर्जिने र उत्तम दानशील छन्। हामी उनका उग्र र तेजस्वी संरक्षण सामर्थ्यको माग गर्दछौं।

व्रातंव्रातं गणंगणं सुशस्तिभिरग्नेर्भामं मरुतामोज ईमहे।
पृषदश्वासो अनवभ्रराधसो गन्तारो यज्ञं विदथेषु धीराः ॥६॥
विचित्र रङ्गका अश्व भएका, अक्षय धन भएका, धीर मरुत्हरू हव्यका कामनाले यज्ञमा जान्छन्। सधैंभरि हुलमै हिँड्ने गरेका मरुत्हरूको बल र अग्निको प्रकाशित ओजको कामना गर्दै हामी उत्तम स्तुतिले उनीहरूको गुणगान गर्दछौं।

अग्निरस्मि जन्मना जातवेदा घृतं मे चक्षुरमृतं म आसन्।
अर्कस्त्रिधातू रजसो विमानोऽजस्रो घर्मो हविरस्मि नाम ॥७॥
म जन्मजात रूपले सबै कुराको जानकारी भएको अग्नि हुँ। घिउ मेरो आँखाको शक्ति हो। मेरा मुखमा अमृत छ। म प्राणरूपमा तीनै वटालाई धारण गरेर अन्तरिक्ष मापन गर्दछु। निरन्तर तेजोमय सूर्य, हवि एवं हविवाहक पनि म नै हुँ।

त्रिभिः पवित्रैरपुपोद्ध्यर्कं हृदा मतिं ज्योतिरनु प्रजानन्।
वर्षिष्ठं रत्नमकृत स्वधाभिरादिद् द्यावापृथिवी पर्यपश्यत् ॥८॥
आफ्नै अन्तःकरणमा मनन गर्न योग्य ज्योतिलाई राम्ररी चिनेर अग्नि, जल र सूर्यका रूपमा पूजनीय आत्माको परिमार्जन गर्नुपर्दछ। अग्निका यी तीन रूपबाट आत्मालाई उत्कृष्टतम र रमणीय बनाउनुपर्छ। द्यावापृथिवीलाई सबै तिरबाट हेर्न सकिन्छ।

शतधारमुत्समक्षीयमाणं विपश्चितं पितरं वक्त्वानाम्।
मेळिं मदन्तं पित्रोरुपस्थे तं रोदसी पिपृतं सत्यवाचम् ॥९॥
हे द्यावापृथिवी ! सयौं धारा हुने, जलप्रवाहजस्तै अक्षय रहने, वचन पालन गर्ने, सङ्गठित गराउने, प्रवाहशील, सत्यवादी र मातापितारूपी तिमीहरूका काखमा प्रसन्न हुने अग्निदेवलाई तिमीहरू राम्ररी पूरा गराओ।

[सूक्त - २७]

ऋषि - विश्वामित्र गाथिन। देवता - अग्नि। छन्द - गायत्री।

प्र वो वाजा अभिद्यवो हविष्मन्तो घृताच्या। देवाञ्जिगाति सुम्नयुः ॥१॥
हे ऋतुहरू हो ! अन्न, तेज र ऐश्वर्यको अभिलाषाले ऋत्विक्हरू घिउले भरिएको सुरो र हविष्यान्नयुक्त भएर देवताहरूको यजन गर्दछन्। उनीहरू सुखको इच्छा गर्ने हुनाले देवताहरूलाई प्राप्त गर्दछन्।

ईळे अग्निं विपश्चितं गिरा यज्ञस्य साधनम्। श्रुष्टीवानं धितावानम् ॥२॥
यज्ञ आदि असल कर्महरू सम्पन्न गराउने, प्रज्ञावान्, वेगवान् र धनवान् अग्निदेवको स्तुति गार्दै हामी उनीहरूको पूजा र सम्मान गर्दछौं।

**अग्ने शकेम ते वयं यमं देवस्य वाजिनः । अति द्वेषांसि तरेम ॥३॥**
हे दीप्तिमान् अग्निदेव ! हामी हविष्यान्न तयार गरेर तिमीलाई आफ्ना नजिकै राखीकन यजन गर्न सकौँ र पापबाट मुक्ति पाऔँ।

**समिध्यमानो अध्वरेऽग्निः पावक ईड्यः । शोचिष्केशस्तमीमहे ॥४॥**
अग्निदेव यज्ञमा प्रज्वलित भएर कपालरूपी ज्वाला भएका, पवित्र गराउने र स्तुत्य भएका छन्। उनीसित हामी मन लागेका कुरो माग्दछौँ।

**पृथुपाजा अमर्त्यो घृतनिर्णिक्स्वाहुतः । अग्निर्यज्ञस्य हव्यवाट् ॥५॥**
महान् तेजस्वी, अजरअमर, घिउजत्तिकै तेजयुक्त, उचित किसिमले आह्वान र पूजा गरिने अग्निदेव यज्ञमा चढाइएको हवि धारण गर्दछन्।

**तं सबाधो यतस्रुच इत्था धिया यज्ञवन्तः । आ चक्रुरग्निमूतये ॥६॥**
बाधाविघ्न हटाएर यज्ञ सम्पन्न गर्ने, यज्ञका साधनले युक्त ऋत्विक्हरूले आफ्नो रक्षाका लागि हव्यले भरिएको सुरो अगाडि सारेर स्तुति गर्दै अग्निदेवलाई समर्पित गरे। यस किसिमले उनलाई आफ्नो अनुकूल बनाए।

**होता देवो अमर्त्यः पुरस्तादेति मायया । विदथानि प्रचोदयन् ॥७॥**
देवतालाई आह्वान गर्ने, अविनाशी, प्रकाशका पुञ्ज अग्निदेव याजकहरूलाई सत्कर्ममा प्रेरित गराउँदै चाँडै प्रकट हुन्छन्।

**वाजी वाजेषु धीयतेऽध्वरेषु प्र णीयते । विप्रो यज्ञस्य साधनः ॥८॥**
बलशाली शत्रु मार्नका लागि लडाईमा अग्निलाई स्थापित गरिन्छ। ज्ञानसम्पन्न अग्नि यज्ञ आदि असल कर्म सिद्ध गर्ने साधनका रूप हुन्।

**धिया चक्रे वरेण्यो भूतानां गर्भमा दधे । दक्षस्य पितरं तना ॥९॥**
सबै यज्ञ कर्ममा प्रकट हुने हुनाले र सबै प्राणीमा व्याप्त भएर रहेका हुनाले अग्निदेव महान् छन्। विश्व पालन गर्ने अग्निदेवलाई वेदी स्वरुपिणी दक्षकी पुत्रीले यज्ञ आदि कर्मका लागि धारण गर्दछिन्।

**नि त्वा दधे वरेण्यं दक्षस्येडा सहस्कृत । अग्ने सुदीतिमुशिजम् ॥१०॥**
हे अग्निदेव ! तिमी घोटिएका बलले प्रकट हुने, महान्, तेजस्वी, घिउ आदि हविष्यान्न खोज्ने र रोज्ने गर्दछौ। तिमीलाई दुई रूप भएकी दक्षकी पुत्री इडाले धारण गर्छिन्।

**अग्निं यन्तुरमप्तुरमृतस्य योगे वनुषः । विप्रा वाजैः समिन्धते ॥११॥**
मेधावी साधकहरू संसारका नेता हुन्। उनीहरू जल प्रवाहित गर्ने अग्निदेवलाई हविष्यान्नद्वारा उचित रूपमा प्रदीप्त गराउँछन्।

**ऊर्जो नपातमध्वरे दीदिवांसमुप द्यवि । अग्निमीडे कविक्रतुम् ॥१२॥**
बल भएका, द्युलोकलाई उज्यालो पार्ने, अग्निदेवलाई हामी यज्ञमा स्तुति गर्दछौँ।

**ईडेन्यो नमस्यस्तिरस्तमांसि दर्शतः । समग्निरिध्यते वृषा ॥१३॥**
स्तुति गर्न योग्य, प्रणाम गर्न योग्य, अन्धकार नाश गर्ने, हेर्नमा राम्रा र शक्तिशाली हे अग्निदेव ! तिमी आहुतिद्वारा राम्ररी प्रज्वलित र संवर्द्धित हुन्छौ।

**वृषो अग्निः समिध्यतेऽश्वो न देववाहनः । तं हविष्मन्त ईडते ॥१४॥**
बलिया अश्वले राजालाई बोकेर हिँडेझैँ अग्निदेवले देवताहरूकहाँ हवि पुर्‍याउँछन्। यस्ता अग्निदेव उत्तम किसिमले प्रदीप्त भएर यजमानबाट प्रशंसा पाउँछन्।

**वृषणं त्वा वयं वृषन्वृषणः समिधीमहि । अग्ने दीद्यतं बृहत् ॥१५॥**
हे बलशाली अग्निदेव ! घिउको हवि प्रदान गर्ने हामीहरू शक्तिशाली, तेजस्वी र महान् हुनाले तिमीलाई प्रदीप्त गराउँछौँ।

**[सूक्त - २८**

**ऋषि** - विश्वामित्र गाथिन । **देवता** - अग्नि । **छन्द** - गायत्री उष्णिक् त्रिष्टुप् जगती ।

**अग्ने जुषस्व नो हविः पुरोडाशं जातवेदः । प्रातः सावे धियावसो ॥१॥**
हे ज्ञानले सम्पन्न अग्निदेव ! हाम्रो स्तुति तिमीसँगै रहन्छ। तिमी प्रातःकालीन सवनमा आएर हामीले चढाएको पुरोडाश सेवन गर।

पुरोडा अग्ने पचतस्तुभ्यं वा घा परिष्कृतः। तं जुषस्व यविष्ठ्य ॥२॥

हे सधैंका युवा अग्निदेव ! पुरोडाश तिम्रे लागि पकाइएको हो, त्यसलाई घिउ आदिले अफ राम्रो पारिएको छ, ग्रहण गर।

अग्ने वीहि पुरोडाशमाहुतं तिरोअह्न्यम्। सहसः सूनुरस्यध्वरे हितः ॥३॥

हे अग्निदेव ! साँफपख समर्पित पुरोडाश सेवन गर। तिमी बलका पुत्र हौ र यज्ञमा सर्वहितकारी छौ।

माध्यन्दिने सवने जातवेदः पुरोडाशमिह कवे जुषस्व।
अग्ने यह्वस्य तव भागधेयं न प्र मिनन्ति विदथेषु धीराः ॥४॥

बुद्धि र ज्ञानले सम्पन्न भई सबै कुरो जान्ने अग्निदेव ! यस यज्ञमा दिउँसोका सवनमा अर्पण गरिएको पुरोडाश सेवन गर। यज्ञमा धीर अध्वर्युहरू तिम्रो भाग हराउँदैनन्।

अग्ने तृतीये सवने हि कानिषः पुरोडाशं सहसः सूनवाहुतम्।
अथा देवेष्वध्वरं विपन्यया धा रत्नवन्तममृतेषु जागृविम् ॥५॥

हे बलका पुत्र अग्निदेव ! तेस्रो सवनमा बेलुकीपख दिइएको पुरोडाश स्वीकार गर। त्यसपछि अविनाशी, रत्नधारक, चैतन्यस्वरूप सोम देवताहरूसम्म पुऱ्याइदेऊ।

अग्ने वृधान आहुतिं पुरोडाशं जातवेदः। जुषस्व तिरोअह्न्यम् ॥६॥

हे जन्मका साथ ज्ञानले सम्पन्न अग्निदेव ! हुर्कंदै आएका तिमी दिनका अन्त्यमा समर्पित गरिएको पुरोडाशरूपी आहुति पनि सेवन गर।

[सूक्त - २९]

ऋषि - विश्वामित्र गाथिन। देवता - अग्नि। छन्द - त्रिष्टुप् अनुष्टुप् जगती।

अस्तीदमधिमन्थनमस्ति प्रजननं कृतम्।
एतां विश्पत्नीमा भराग्निं मन्थाम पूर्वथा ॥१॥

संसार पालन गर्ने अरणी भनेको मन्थन गर्ने साधन हो। यसैबाट अग्नि प्रकट हुन्छन्। अरणी लिएर आऔं र पहिलेको जस्तै मन्थन गरेर अग्निदेवलाई प्रकट गराऔं।

अरण्योर्निहितो जातवेदा गर्भ इव सुधितो गर्भिणीषु।
दिवेदिव ईड्यो जागृवद्भिर्हविष्मद्भिर्मनुष्येभिरग्निः ॥२॥

गर्भिणीका पेटमा सुरक्षित गर्भजस्तै सर्वज्ञ अग्निदेव अरणीभित्र अड्याएर बसेका हुन्छन्। यज्ञका लागि जागरुक रहने होताहरू सधैं नै वन्दनीय हुन्छन्।

उत्तानायामव भरा चिकित्वान्त्सद्यः प्रवीता वृषणं जजान।
अरुषस्तूपो रुशदस्य पाज इडायास्पुत्रो वयुनेऽजनिष्ट ॥३॥

हे आन्तरिक बुद्धिले सम्पन्न होताहरू हो ! तिमीहरू उत्तानो मुख भराओ। भरिएपछि चाँडै नै चाहिएको कुरो वर्षा गर्नेलाई उत्पन्न गराओ। त्यसको तेज प्रकट हुन्छ। यसै गरी उज्यालो प्रकाशले युक्त इडाको पुत्र उत्पन्न हुन्छ।

इडायास्त्वा पदे वयं नाभा पृथिव्या अधि।
जातवेदो नि धीमह्यग्ने हव्याय वोढवे ॥४॥

हे सर्वज्ञाता अग्निदेव ! पृथ्वीका केन्द्रीय स्थलको उत्तर वेदीका बीचमा तिमीलाई हामी स्थापित गराउँछौं। हामीबाट समर्पित हवि ग्रहण गर।

मन्थता नरः कविमद्वयन्तं प्रचेतसममृतं सुप्रतीकम्।
यज्ञस्य केतुं प्रथमं पुरस्तादग्निं नरो जनयता सुशेवम् ॥५॥

हे याजकहरू हो ! बुद्धिमान्, छलकपटविनाका, उत्तम ज्ञानले सम्पन्न, अमर र सुन्दर शरीर भएका अग्निदेवलाई मन्थन गरेर उत्पन्न गराओ। समाजको नेतृत्व गर्ने हे याजकहरू हो ! ज्ञानको पहिलो ध्वजाका रूपमा पहिले पुज्नुपर्ने, उत्तम सुखका खानी अग्निदेवलाई प्रकट गराओ।

यदी मन्थन्ति बाहुभिर्वि रोचतेऽश्वो न वाज्यरुषो वनेष्वा।
चित्रो न यामन्नश्विनोरनिवृतः परि वृणक्त्यश्मनस्तृणा दहन् ॥६॥

हातले अरणी मन्थन गरिदाखेर शीघ्रगामी अश्वजस्तै गति हुने अग्निदेव काठमा रातो रङ्गले विशेष रूपमा प्रकाशित हुन्छन्। अश्विनीकुमारको छिटो कुद्ने रथ विशिष्ट शोभायमान छ। अग्निदेव निर्बाध गतिले फारपात डढाउँदै ढुङ्गालेमा अगाडि सर्छन्।

जातो अग्नी रोचते चेकितानो वाजी विप्रः कविशस्तः सुदानुः।
यं देवास ईड्यं विश्वविदं हव्यवाहमदधुरध्वरेषु ॥७॥

प्रकट भएका अग्निदेव ज्ञानवान्, वेगवान् र मेधावान् छन्। त्यसैले मेधावीहरू उनको प्रशंसा गर्दछन्। उत्तम कर्मको फल प्रदान गर्ने अग्निदेव सर्वत्र सुन्दर देखिन्छन्। देवताहरूले स्तुत्य र सर्वज्ञाता अग्निलाई यज्ञमा हव्य सामग्री हवन गर्न स्थापित गरे।

सीद होतः स्व उ लोके चिकित्वान्त्सादया यज्ञं सुकृतस्य योनौ।
देवावीर्देवान्हविषा यजास्यग्ने बृहद्यजमाने वयो धाः ॥८॥

हे होतारूपी अग्निदेव ! सबै कर्मका ज्ञाता तिमी आफ्ना प्रतिष्ठित स्थानलाई सुशोभित गराऊ र असल कर्मरूपी यज्ञ सम्पन्न गराऊ। देवतालाई सन्तुष्ट गराउने हे अग्निदेव ! तिमी याजकहरूले दिएको आहुतिले देवताहरूलाई खुसी पार्दै याजकहरूलाई धनधान्य एवं दीर्घायु प्रदान गर।

कृणोत धूमं वृषणं सखायोऽस्रेधन्त इतन वाजमच्छ।
अयमग्निः पृतनाषट् सुवीरो येन देवासो असहन्त दस्यून् ॥९॥

हे मित्र हो ! तिमीहरू पहिले धुवाँयुक्त अग्नि प्रकट गराओ। त्यसपछि शक्तिशाली भएर युद्धमा अगाडि आओ। अग्निदेव असल वीर र शत्रुविजेता हुन्। यिनका सहायताले देवताहरूले असुरलाई पराजित गरे।

अयं ते योनिर्ऋत्वियो यतो जातो अरोचथाः।
तं जानन्नग्न आ सीदाथा नो वर्धया गिरः ॥१०॥

हे अग्निदेव ! तिमी यिनै अरणीका कारण सुन्दर रूपमा उत्पन्न भयौ। आफ्नो त्यो रहस्य जानेर तिमी त्यसै मूलमा प्रतिष्ठित होऊ र हाम्रो स्तुति बढाइदेऊ।

तनूनपादुच्यते गर्भ आसुरो नराशंसो भवति यद्विजायते।
मातरिश्वा यदमिमीत मातरि वातस्य सर्गो अभवत्सरीमणि ॥११॥

गर्भमा रहेका अग्निदेवको नाम तनूनपात हो। अत्यन्त बलशाली रूपमा प्रकट भएपछि नराशंस कहलाउँछन्। अन्तरिक्षमा तेज फिँजाएपछि तिनको नाम मातरिश्वा हुन्छ। यिनैले तीव्र वेगमा गति लिएपछि वायुको उत्पत्ति हुन्छ।

सुनिर्मथा निर्मथितः सुनिधा निहितः कविः।
अग्ने स्वध्वरा कृणु देवान्देवयते यज ॥१२॥

हे मेधावी अग्निदेव ! असल मदानीले मन्थन गर्दा तिमी उत्पन्न हुन्छौ। तिमीलाई सबैभन्दा उत्तम स्थानमा स्थापित गरिएको छ। हाम्रो यज्ञ राम्ररी सम्पन्न गराऊ र देवत्वको कामना गर्ने हामी याजकहरूका लागि देवताहरूको यजन गर।

अजीजनन्नमृतं मर्त्यासोऽस्रेमाणं तरणिं वीडुजम्भम्।
दश स्वसारो अग्रुवः समीचीः पुमांसं जातमभि सं रभन्ते ॥१३॥

मरणशील याजकहरूले अमर, अक्षय, सुदृढ दाँत भएका, पापबाट मुक्ति प्रदान गर्ने अग्निदेवलाई उत्पन्न गराए। अग्नि उत्पन्न हुँदा छोरो जन्मिँदाझैं हर्षका साथ दसै औँला एकापसमा जोडेर अत्यन्त खुसी प्रकट गर्दै हल्लाखल्ला गरेर रमाइलो गर्छन्।

प्र सप्तहोता सनकादरोचत मातुरुपस्थे यदशोचदूधनि।
न नि मिषति सुरणो दिवेदिवे यदसुरस्य जठरादजायत ॥१४॥

सनातन अग्निदेवलाई सात होताले दीप्तिमान् गराउँछन्। यिनी माता पृथिवीका काखमा जलका नजिकैको स्थानमा शोभायमान रहँदा आकर्षक देखिन्छन्। यिनी कहिल्यै ननिदाए पनि सधैँ उस्तै दठा रहन्छन्। यिनी अत्यन्त बलवान् गर्भबाट उत्पन्न हुन्छन्।

अमित्रायुधो मरुतामिव प्रयाः प्रथमजा ब्रह्मणो विश्वमिद्विदुः।
द्युम्नवद्ब्रह्म कुशिकास एरिर एकएको दमे अग्निं समीधिरे ॥१५॥

मरुत्को सेनाझैं युद्ध गर्ने र ब्रह्माका पुत्रहरूमा सबैभन्दा जेठा कुशिकका वंशज ऋषिहरूले संसार चिनेका छन्। उनीहरू तेजस्वी हविष्यान्नसहित स्तोत्रले अग्निदेवको स्तुति गर्दछन्। उनीहरू यज्ञका निम्ति आआफ्ना घरमा अग्निदेवलाई जगाउँछन्।

यदद्य त्वा प्रयति यज्ञे अस्मिन्होतश्चिकित्वाऽवृणीमहीह।
ध्रुवमया ध्रुवमुताशमिष्ठाः प्रजानन्विद्वाँ उप याहि सोमम् ॥१६॥

यज्ञजस्ता असल कर्म सम्पन्न गर्ने, सबै कुरो जानेका हे अग्निदेव ! आजको यस यज्ञमा हामी तिमीलाई नै रोज्दछौँ। तिमी यसै यज्ञमा बलियो किसिमले स्थापित भएर सबैतिर शान्ति स्थापना गर। हे विद्वान् अग्निदेव ! सोमरस पेलेर तयार भएको जानेपछि तिमी नजिकै गएर ग्रहण गर।

[सूक्त - ३०]

ऋषि - विश्वामित्र। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

इच्छन्ति त्वा सोम्यासः सखायः सुन्वन्ति सोमं दधति प्रयांसि।
तितिक्षन्ते अभिशस्तिं जनानामिन्द्र त्वादा कश्चन हि प्रकेतः ॥१॥

हे इन्द्रदेव ! सोमयाग गर्ने सखारूपी ऋत्विक्हरू तिम्रो स्तवन गर्ने रहर गर्दछन्। उनीहरू तिम्रा लागि सोमरस छानेर तयार गर्दछन् र हविष्यान्न धारण गर्दछन्। उनीहरू शत्रुको हिंसक प्रहार सहन गर्दछन्। हे इन्द्रदेव ! तिमीभन्दा प्रसिद्ध अर्को को होला ?

न ते दूरे परमा चिद्रजांस्या तु प्र याहि हरिवो हरिभ्याम्।
स्थिराय वृष्णे सवना कृतेमा युक्ता ग्रावाणः समिधाने अग्नौ ॥२॥

साह्रै चाँडो कुद्ने अश्व भएका हे इन्द्रदेव ! अति नै टाढा भएका पनि तिम्रा लागि टाढा होइनन्। किनभने तिम्रो अश्व सबै ठाउँमा पुग्छ। तिमी स्थायी बलले युक्त र चाहिएको कुरो पुऱ्याइदिने हौ। तिम्रै लागि भनेर यज्ञ आदि कार्य सम्पन्न गरिएका छन्। यहाँ अग्नि बलिसकेपछि सोमरस पेल्नका लागि ढुङ्गाहरू काम लाग्दछन्।

इन्द्रः सुशिप्रो मघवा तरुत्रो महाव्रातस्तुविकूर्मिर्ऋघावान्।
यदुग्रो धा बाधितो मर्त्येषु क्व१ त्या ते वृषभ वीर्याणि ॥३॥

हे चाहिएको कुरो पुऱ्याइदिने इन्द्रदेव ! तिमी धनी, राम्रो टोपी लगाउने, शत्रुको विनाश गर्ने, महान् अनुशासन पालन गर्ने, विभिन्न कर्म सम्पन्न गर्ने र विकराल छौ। युद्ध टारेर तिमी मानिसका लागि जस्तो पराक्रम गर्दछौ त्यो सामर्थ्य कहाँ छ ?

त्वं हि ष्मा च्यावयन्नच्युतान्येको वृत्रा चरसि जिघ्नमानः।
तव द्यावापृथिवी पर्वतासोऽनु व्रताय निमितेव तस्थुः ॥४॥

हे इन्द्रदेव ! अत्यन्त बलिया शत्रुलाई तिमीले एक्लै उठिबास लगायौ र वृत्रलाई मार्दै सबैतिर डुलेका थियौ। सम्पूर्ण द्यावापृथिवी र बलिया पर्वतहरू तिम्रै डरले गर्दा निश्चल र सजिला भइदिन्छन्।

उतभये पुरुहूत श्रवोभिरेको दृढहमवदो वृत्रहा सन्।
इमे चिदिन्द्र रोदसी अपारे यत्संगृभ्णा मघवन्काशिरित्ते ॥५॥

हे धेरैबाट गुहार माग्नका लागि बोलाइने ऐश्वर्यशाली इन्द्रदेव ! बलयुक्त भएका तिमीले वृत्रलाई एक्लै मारेर निडर हुने वचन बोल्यौ, त्यो नै पूर्ण रूपमा सत्य हो। टाढा रहेका द्यावा र पृथिवीलाई तिमीले संयुक्त गराएकाले महिमा प्रख्यात भएको छ।

प्र सू त इन्द्र प्रवता हरिभ्यां प्र ते वज्रः प्रमृणन्नेतु शत्रून्।
जहि प्रतीचो अनूचः पराचो विश्वं सत्यं कृणुहि विष्टमस्तु ॥६॥

हे इन्द्रदेव ! हरियो रङ्गका अश्वले तानेको तिम्रो रथ उचित मार्गमा अघि बढोस्। तिम्रो वज्र शत्रु मार्दै अगाडि जाओस्। तिमी अगाडिबाट आउने, पछाडिबाट आउने र टाढाबाट आउने शत्रु विनाश गर। मानिसलाई विश्वसत्यका कर्ममा प्रवृत्त हुने सामर्थ्य देऊ।

यस्मै धायुरदधा मर्त्यायाभक्तं चिद्भजते गेह्यं१ सः।
भद्रा त इन्द्र सुमतिर्घृताची सहस्रदाना पुरुहूत रातिः ॥७॥

हे धेरैले बोलाउने गरेका इन्द्रदेव ! आफूले धारण गरेको ऐश्वर्य मानिसलाई प्रदान गर्छौ। पहिले कहिल्यै पाउन नसकेका पशु, घर आदि वैभव त्यस मानिसले प्राप्त गर्दछ। घिउ आदि हव्यले खुसी भएका तिमीबाट पाएको कृपा हितकारी हुन्छ। तिम्रो दान अनन्त ऐश्वर्यले भरिएको होस्।

सहदानुं पुरुहूत क्षियन्तमहस्तमिन्द्र सं पिणक्कुणारुम्।
अभि वृत्रं वर्धमानं पियारुमपादमिन्द्र तवसा जघन्थ ॥८॥

हे धेरैबाट बोलाइने इन्द्रदेव ! दानीहरूका तिमी आश्रयदाता हौ। साहै चर्को गर्जना गर्ने वृत्रलाई तिमीले हात नभएको डुँडो बनाएर टुक्राटुक्रा पाऱ्यौ। हे इन्द्रदेव ! तिमीले उर्लंदै आएको र हिंसक स्वभावका वृत्रलाई गोडाविनाको खोरन्डो बनाएर बलपूर्वक मारेका थियौ।

नि सामनामिषिरामिन्द्र भूमिं महीमपारां सदने ससत्थ।
अस्तभ्नाद् द्यां वृषभो अन्तरिक्षमर्षन्त्वापस्त्वयेह प्रसूताः ॥९॥

हे इन्द्रदेव ! अत्यन्त विस्तृत रूपमा फैलिएका पृथ्वीलाई तिमीले अन्नको खानी र समानताको भावनाले सम्पन्न बनाएर उपयुक्त स्थानमा स्थापित गरायौ। हे चाहिएको कुरो पुऱ्याइदिने इन्द्रदेव ! तिमीले अन्तरिक्ष र द्युलोक पनि धारण गरेका छौ। तिमीबाट बगाइएको जलको प्रवाह यसै भूमिमा बगोस्।

अलातृणो वल इन्द्र व्रजो गोः पुरा हन्तोर्भयमानो व्यार।
सुगान्पथो अकृणोन्निरजे गाः प्रावन्वाणीः पुरुहूतं धमन्तीः ॥१०॥

हे इन्द्रदेव ! सूर्यका रश्मिसमूहमा अधिकार भएको, सङ्ग्रहशील तिम्रा वज्रदेखि डराएको बल नामको असुर टुक्राटुक्रा भयो। त्यसपछि जलप्रवाह बग्नका लागि तिमीले बाटो सजिलो पारिदियौ। स्तुति गर्न योग्य र धेरैले बोलाइएका इन्द्रदेवबाट प्रेरित भएर सुसाउँदै पानीको धारो बग्न थाल्यो।

एको द्वे वसुमती समीची इन्द्र आ पप्रौ पृथिवीमुत द्याम्।
उतान्तरिक्षादभि नः समीक इषो रथीः सयुजः शूर वाजान् ॥११॥

इन्द्रदेवले एक्लै पृथिवी र द्यावा आपसमा सङ्गठित गराएर धन एकत्र गर्ने काम पूर्ण गरेका छन्। हे शूरवीर इन्द्रदेव ! उत्तम रथीजस्ता तिमी वेगपूर्वक कुद्ने अश्वलाई रथमा जोडेर हामीहरूका बीचमा उपस्थित हुने कृपा गर।

दिशः सूर्यो न मिनाति प्रदिष्टा दिवेदिवे हर्यश्वप्रसूताः।
सं यदानळध्वन आदिदश्वैर्विमोचनं कृणुते तत्त्वस्य ॥१२॥

इन्द्रदेवबाट प्रेरित भएर सूर्यले निश्चित दिशा अनुसरण गरेका छन्। उनी अश्वमा आफ्नो गन्तव्य पूरा गरेपछि अश्व खोल्दछन्। यो पनि इन्द्रदेवकै लागि गरेका छन्।

दिदृक्षन्त उषसो यामन्नक्तोर्विवस्वत्या महि चित्रमनीकम्।
विश्वे जानन्ति महिना यदागादिन्द्रस्य कर्म सुकृता पुरूणि ॥१३॥

रात बितेर उषा प्रकट हुँदा सबै मानिसहरू उनै महान् र विचित्र सूर्यदेवका तेजको दर्शन गर्ने रहर गर्दछन्। उषाको आगमन भएपछि मानिसहरू इन्द्रदेवका लागि हितकारी यज्ञ आदि महान् कार्य गर्नु आफ्नो कर्तव्य ठान्दछन्।

महि ज्योतिर्निहितं वक्षणास्वामा पक्वं चरति बिभ्रती गौः।
विश्वं स्वाद्म सम्भृतमुस्रियायां यत्सीमिन्द्रो अदधाद्भोजनाय ॥१४॥

जलको प्रवाहभित्र इन्द्रदेवले विशाल तेज स्थापित गरेका छन्। उनले जलभन्दा बढी स्वादिलो दुध घिउ आदि भोज्य पदार्थ गाईभित्र स्थापित गरेका छन्। भर्खर ब्याएका गाई दुध लिएर चहार्ने गर्दछन्।

इन्द्र दृह्य यामकोशा अभूवन्यज्ञाय शिक्ष गृणते सखिभ्यः।
दुर्मायवो दुरेवा मर्त्यासो निषङ्गिणो रिपवो हन्त्वासः ॥१५॥

हे इन्द्रदेव ! शत्रुले बाधा उत्पन्न गराउँदा तिमी दरिलो भइदेऊ। यज्ञ र स्तुति गर्ने मित्रलाई मन परेका बाटामा प्रेरित गर। शस्त्र प्रहार गर्ने, कुमार्गमा लागेका, बाण आदि लिएका शत्रु तिमीले मारिदिनुपर्दछ।

सं घोषः शृण्वेऽवमैरमित्रैर्जही न्येष्वशनिं तपिष्ठाम्।
वृश्चेमधस्ताद्वि रुजा सहस्व जहि रक्षो मघवन् रन्धयस्व ॥१६॥

हे इन्द्रदेव ! नजिकै शत्रुले छोडेका हतियारको शब्द सुनिंदै छ। दुःख दिने हतियारले तिमी शत्रुको विनाश गर। उनीहरूको जरै मासिदेऊ। राक्षसलाई सताऊ, पराजित गराऊ र तिनीहरूको वध गरेर यज्ञका काममा लाग।

उद्‌वृह रक्षः सहमूलमिन्द्र वृश्चा मध्यं प्रत्यग्रं शृणीहि।
आ कीवतः सललूकं चकर्थ ब्रह्मद्विषे तपुषिं हेतिमस्य ॥१७॥

हे इन्द्रदेव ! तिमी राक्षसको जरो उखेल, माझको भाग टुक्रा पार र टुप्पो छिमलिदेऊ। लोभी राक्षसलाई पर भगाऊ। असल ज्ञानका कामसित रिस गर्नेलाई भयङ्कर हतियारले प्रहार गर।

स्वस्तये वाजिभिश्च प्रणेतः सं यन्महीरिष आसत्सि पूर्वीः।
रायो वन्तारो बृहतः स्यामास्मे अस्तु भग इन्द्र प्रजावान् ॥१८॥

हे संसार अनुशासित गर्ने इन्द्रदेव ! कल्याणका लागि हामीलाई अश्व देऊ। तिमी हाम्रा नजिकै हुँदा हामी अनन्त अन्न र मनग्गे धनका अधिपति बनौँ। हामीलाई पुत्रपौत्रादिले युक्त ऐश्वर्य प्राप्त होस्।

आ नो भर भगमिन्द्र द्युमन्तं नि ते देष्णस्य धीमहि प्ररेके।
ऊर्वइव पप्रथे कामो अस्मे तमा पृण वसुपते वसूनाम् ॥१९॥

हे दानशील इन्द्रदेव ! हामीलाई तेजसम्पन्न ऐश्वर्यले परिपूर्ण गराऊ। हामी तिम्रो दान ग्रहण गर्दछौँ। हाम्रो रहर समुद्रको आगोजस्तै भएर बढ्दछ। हे धनमध्ये असल धनका अधिपति इन्द्रदेव ! हाम्रो इच्छा तिमी पूरा गर।

इमं कामं मन्दया गोभिरश्वैश्चन्द्रवता राधसा पप्रथश्च।
स्वर्यवो मतिभिस्तुभ्यं विप्रा इन्द्राय वाहः कुशिकासो अक्रन् ॥२०॥

हे इन्द्रदेव ! हाम्रो रहर पूरा गराऊ। हामीलाई गाई, अश्व र खुसीयाली दिने ऐश्वर्यले सम्पन्न गराऊ। स्वर्ग आदिका सुखको आशा गर्ने र बुद्धिमान् कुशिकका वंशजले बुद्धिमत्तापूर्वक स्तोत्र सम्पादन गरेका छन्।

आ नो गोत्रा दर्दृहि गोपते गाः समस्मभ्यं सनयो यन्तु वाजाः।
दिवक्षा असि वृषभ सत्यशुष्मोऽस्मभ्यं सु मघवन्बोधि गोदा ॥२१॥

हे स्वर्गका अधिपति इन्द्रदेव ! मेघ च्यातेर हामीलाई पानी देऊ। खान हुने अन्न हामीलाई देऊ। तिमी द्युलोकमा व्याप्त भएर रहेका छौ। हे सत्यका बलले सम्पन्न र ऐश्वर्यले युक्त इन्द्रदेव ! ज्ञान प्रदान गर्ने तिमी हामीलाई सर्वोत्कृष्ट ज्ञान प्रदान गर।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥२२॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेनालाई विनाश गर्ने, याजकबाट गरिएका स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौँ।

[सूक्त - ३१]

**ऋषि** – विश्वामित्र गाथिन। **देवता** – इन्द्र। **छन्द** – त्रिष्टुप्।

शासद्वह्निर्दुहितुर्नप्त्यं गाद्विद्वाँ ऋतस्य दीधितिं सपर्यन्।
पिता यत्र दुहितुः सेकमृञ्जन्त्सं शग्म्येन मनसा दधन्वे ॥१॥

विद्वान् पुत्रहीन पिताले सामर्थ्यवान् ज्वाईंको सत्कार गरेर छोरीका छोरालाई पुत्रका रूपमा स्वीकार गर्दछन्। पिताले पुत्रीलाई विवाहका लागि योग्य बनाएपछि मनले अत्यन्त सुखको अनुभव गर्दछ।

न जामये तान्वो रिक्थमारैक्चकार गर्भं सनितुर्निधानम्।
यदी मातरो जनयन्त वह्निमन्यः कर्ता सुकृतोरन्य ऋन्धन् ॥२॥

दाजुभाइले दिदीबहिनीलाई पैत्रृक सम्पत्तिको अंश दिँदैनन् तापनि उनका पतिलाई नयाँ घरजमका लागि योग्य बनाउँछन्। मातापिताले छोरो र छोरी एक समान रूपमा जन्माएका हुन्छन्। तीमध्ये एउटा छोरो हुनाले पैतृक कर्म सम्पन्न गर्दछ र अर्को छोरी हुनाले सम्मान र शोभा धारण गरेकी हुन्छे।

अग्निर्जज्ञे जुह्वा३ रेजमानो महस्पुत्राँ अरुषस्य प्रयक्षे।
महान्गर्भो मह्या जातमेषां मही प्रवृद्धर्यश्वस्य यज्ञैः ॥३॥

हे अत्यन्त तेजस्वी इन्द्रदेव ! तिम्रा निम्ति यज्ञ गर्नका लागि ज्वालाले कम्पायमान अग्निदेव आफ्ना सन्तान उत्पन्न गर्दछन्। सन्तानरूपी रश्मिको जलरूपी गर्भ महान् छ। औषधिरूपी उत्पत्ति पनि महान् छ। हे इन्द्रदेव ! तिम्रा यज्ञका कारण रश्मि महानतातर्फ अग्रसर भएको छ।

अभि जैत्रीरसचन्त स्पृधानं महि ज्योतिस्तमसो निरजानन्।
तं जानतीः प्रत्युदायन्नुषासः पतिर्गवामभवदेक इन्द्रः ॥४॥

सधैँ शत्रुमाथि विजय प्राप्त गर्ने मरुत्हरू युद्ध गरिरहेका इन्द्रदेवसँग सम्बन्धित छन्। उनले महान् ज्योतिलाई बाक्लो अन्धकारबाट मुक्त गरे भन्ने कुरो जानेपछि उषाहरू उदाए। यी सबै क्रियाहरूका नियन्त्रक केवल इन्द्रदेव नै हुन्।

वीळौ सतीरभि धीरा अतृन्दन्प्राचाहिन्वन्मनसा सप्त विप्राः।
विश्वामविन्दन्पथ्यामृतस्य प्रजानन्नित्ता नमसा विवेश ॥५॥

बुद्धिमान् र मेधावी सात ऋषिहरूले सुदृढ पर्वतले थुनिराखेका गाई देखे। उँभो लाग्न खोज्ने, असल चिन्तनमा लागिरहने, सफा मनले यज्ञको मार्ग केलाउँदै उनीहरूले त्यस रश्मिको बाटो पत्ता लगाए। ऋषिहरूका सबै काम देखेका इन्द्रदेव स्तोत्रसँगै यज्ञमा प्रवेश गरे।

विदद्यदी सरमा रुग्णमद्रेर्महि पाथः पूर्व्यं सध्र्यक्कः।
अग्रं नयत्सुपद्यक्षराणामच्छा रवं प्रथमा जानती गात् ॥६॥

सरमाले पर्वतजस्तो आकार भएका वृत्रको भत्केको ठाउँ फेला पारेपछि इन्द्रदेवले एउटा सोझो र फराकिलो बाटो बनाए। राम्रा खुट्टा हुने सरमाले इन्द्रदेवलाई त्यस पथमा लगिन्। असुरहरूले पर्वतमा लुकाएर राखेका गाईको शब्द सुनेर सबैभन्दा पहिले सरमाले इन्द्रदेवसित जाँदा त्यहाँ गाई भेटिए।

अगच्छदु विप्रतमः सखीयन्नसूदयत्सुकृते गर्भमद्रिः।
ससान मर्यो युवभिर्मखस्यन्नथाभवदङ्गिराः सद्यो अर्चन् ॥७॥

गतिलो ज्ञान र उचित कर्म भएका इन्द्रदेव अङ्गिराहरूसित मित्रताको रहर गर्दै पर्वतका नजिकै पुगे। पर्वतको आकारमा रहेका असुरले आफ्ना गर्भमा लुकाएका गाई प्रकट गऱ्यो। इन्द्रदेवले मरुत्हरूका सहायताले युद्ध गरेर शत्रु मारेपछि गाई फेला पारे। त्यसपछि अङ्गिराहरूले इन्द्रदेवको अर्चना तत्काल प्रारम्भ गरे।

सतः सतः प्रतिमानं पुरोभूर्विश्वा वेद जनिमा हन्ति शुष्णम्।
प्र णो दिवः पदवीर्गव्युरर्चन्त्सखा सखींरमुञ्चन्निरवद्यात् ॥८॥

शुष्णासुरको वध गरेर युद्धमा अगुवाका रूपमा रहँदै सेनाको नेतृत्व गर्ने इन्द्रदेव उत्पन्न भएका सबै पदार्थ चिन्दछन् र प्रतिनिधित्व गर्दछन्। यस्तो असल मार्ग अनुसरण गर्ने र गाईका रूपमा द्रव्यको आशा गर्ने इन्द्रदेव मित्रका रूपमा पूजनीय हुँदै द्युलोकबाट हामी मित्रहरूका पाप हटाउन्।

नि गव्यता मनसा सेदुरर्कैः कृण्वानासो अमृतत्वाय गातुम्।
इदं चिन्नु सदनं भूर्येषां येन मासाँ असिषासन्नृतेन ॥९॥

अङ्गिराका वंशज ऋषिहरू ज्ञान प्राप्तिको आशा गर्दै यज्ञमा प्रवृत्त भए। उनीहरूले यज्ञमा बसेर स्तोत्रबाट अमरता प्राप्त गर्ने उपाय गरे। यज्ञ उनीहरूका लागि विशाल स्थान हो। यज्ञका माध्यमबाट उनीहरूले महिनाहरूको विभाजन गरे।

सम्पश्यमाना अमदन्नभि स्वं पयः प्रत्नस्य रेतसो दुघानाः।
वि रोदसी अतपद्घोष एषां जाते निःष्ठामदधुर्गोषु वीरान् ॥१०॥

गाई भेटेपछि अङ्गिरा ऋषिले खुसी हुँदै पहिलेको जस्तै तिनीहरूबाट बल प्रदान गर्ने दुध दुहे। उनको खुसीको आवाज आकाश र पृथ्वीमा व्याप्त भयो। गाई फेला परेपछि उनले निष्ठापूर्वक गाईको रक्षा गर्न वीर पुरुष खटाए।

स जातेभिर्वृत्रहा सेदु हव्यैरुदुस्रिया असृजदिन्द्रो अर्कैः।
उरूच्यस्मै घृतवद्भरन्ती मधु स्वाद्म दुदुहे जेन्या गौः ॥११॥

पूजनीय र हव्यका लागि योग्य इन्द्रदेवले मरुत्हरूका मद्दतले वृत्रको वध गरे र जलको प्रवाह उत्पन्न गरे। घिउ र दुध धारण गर्ने, अत्यन्त सम्मानित र प्रशंसनीय गाईले इन्द्रदेवका लागि मिठो र स्वादिलो दुध उपलब्ध गराए।

पित्रे चिच्चक्रुः सदनं समस्मै महि त्विषीमत्सुकृतो वि हि ख्यन्।
विष्कभ्नन्तः स्कम्भनेना जनित्री आसीना ऊर्ध्वं रभसं वि मिन्वन् ॥१२॥

अङ्गिराहरूले सबैको पालनपोषण गर्ने इन्द्रदेवका लागि अत्यन्त राम्रो ठाउँ खोजेर सफा पारेर त्यहीं

स्तुति गर्न थाले। असल काममा लागेका अङ्गिराहरूले यज्ञमा बसेर सबैको उन्नति गराउने द्यावापृथिवीबीच स्तम्भका रूपमा अन्तरिक्ष अड्याए र वेगवान् इन्द्रलाई द्युलोकमा स्थापित गरे।

**मही यदि धिषणा शिश्नथे धात्सद्योवृधं विभ्वंरोदस्योः।**
**गिरो यस्मिन्ननवद्याः समीचीर्विश्वा इन्द्राय तविषीरनुत्ताः ॥१३॥**

सबैको हित चिताएर निरन्तर उन्नतिका बाटामा लागेका इन्द्रदेवका लागि असल स्तोत्र गान गरियो। द्यावापृथिवीका सबै शक्तिमा नै उनको एकाधिकार स्थापित भयो।

**मह्या ते सख्यं वश्मि शक्तीरा वृत्रघ्ने नियुतो यन्ति पूर्वीः।**
**महि स्तोत्रमव आगन्म सूरेरस्माकं सु मघवन्बोधि गोपाः ॥१४॥**

वृत्रको असुर विनाश गर्ने हे इन्द्रदेव ! हामी मित्रता र अपार शक्ति पाउनका लागि तिमीसित प्रार्थना गर्दछौं। अनेकौं अश्व तिमीलाई बोक्नका लागि आउँछन्। हामी स्तोताहरू तिम्रा लागि स्तोत्र पुऱ्याइदिन्छौं। हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमी ज्ञानका रक्षक हौ। हामीलाई दिव्य ज्ञानले प्रेरित गराऊ।

**महि क्षेत्रं पुरुश्चन्द्रं विविद्वानादित्सखिभ्यश्चरथं समैरत्।**
**इन्द्रो नृभिरजनद्दीद्यानः साकं सूर्यमुषसं गातुमग्निम् ॥१५॥**

सबै कुरो जान्ने इन्द्रदेवले आफ्ना मित्रहरूका लागि धेरै ठाउँ र अति तेजस्वी धन दान गरे। त्यसपछि राम्रा गाई पनि दान गरे। दीप्तिमान् इन्द्रदेवले मरुत्हरूका साथमा सूर्य, उषा, अग्नि र उनीहरूको मार्ग बनाए।

**अपश्चिदेष विभ्वो३ दमूनाः प्र सध्रीचीरसृजद्विश्वश्चन्द्राः।**
**मध्वः पुनानाः कविभिः पवित्रैर्द्युभिर्हिन्वन्त्यक्तुभिर्धनुत्रीः ॥१६॥**

शत्रु दमन गराउने इन्द्रदेवले आपसमा सङ्गठित भएर बग्दै सबैलाई सुखी बनाउने जल उत्पन्न गरे। अन्न उत्पादक त्यस जलप्रवाहले अग्नि, सूर्य र वायुबाट शोधित एवं पवित्र भएर मधुर सोमरसलाई रातदिन प्रेरित गर्दछन्।

**अनु कृष्णे वसुधिती जिहाते उभे सूर्यस्य मंहना यजत्रे।**
**परि यत्ते महिमानं वृजध्यै सखाय इन्द्र काम्या ऋजिप्याः ॥१७॥**

हे इन्द्रदेव ! सूर्यका शक्तिले अपार वैभव सम्पन्न, महत्त्वपूर्ण बनेका दिन र रातहरू एकले अर्कालाई पछ्याउँदै निरन्तर गतिमान छन्। उसै गरीकन सजिलो मार्गमा निरन्तर रूपले प्रवाहित भएका मित्र र मरुत्देव शत्रुको विनाश गर्नका लागि सम्पूर्ण बल तिमीबाट पाउँछन्।

**पतिर्भव वृत्रहन्त्सूनृतानां गिरां विश्वायुर्वृषभो वयोधाः।**
**आ नो गहि सख्येभिः शिवेभिर्महान्महीभिरूतिभिः सरण्यन् ॥१८॥**

हे वृत्र विनाश गर्ने इन्द्रदेव ! तिमी अविनाशी, चाहिएको कुरो पुऱ्याइदिने र अन्न प्रदान गर्ने हौ। हामीबाट श्रद्धासाथ गरिएको स्तुति ग्रहण गरेर यज्ञको आशा गर्ने हुनाले तिमी महान् छौ। आफ्नो महान् र हितकारी रक्षण सामर्थ्यले युक्त तिमी मैत्री भावले युक्त होऊ र हामीप्रति अनुग्रह गर।

**तमङ्गिरस्वन्नमसा सपर्यन्नव्यं कृणोमि सन्यसे पुराजाम्।**
**द्रुहो वि याहि बहुला अदेवीः स्वश्च नो मघवन्त्सातये धाः ॥१९॥**

हे पुरातन र दिव्यपुरुष इन्द्रदेव ! नमस्कारको अभिवादनसहित हामी तिम्रो पूजा गर्छौं। तिम्रा लागि नयाँ स्तोत्र सम्पादन गर्दछौं। हे ऐश्वर्यवान् इन्द्रदेव ! दैवी गुणविहीन द्रोहीलाई हामीबाट टाढा लैजाऊ र हामीलाई काम लाग्ने धन प्रदान गर।

**मिहः पावकाः प्रतता अभूवन्त्स्वस्ति नः पिपृहि पारमासाम्।**
**इन्द्र त्वं रथिरः पाहि नो रिषो मक्षूमक्षू कृणुहि गोजितो नः ॥२०॥**

हे इन्द्रदेव ! चारैतिर बर्सने जल प्रशस्त फिँजिएको छ। हाम्रो कल्याणका लागि जलाशयलाई किनारासम्म जलले भरिपूर्ण पार। तीव्रगामी रथले युक्त हे इन्द्रदेव ! शत्रुसित जुध्न सक्ने शक्ति र गाईका रूपमा अपार धन वैभव हामीलाई प्रदान गर।

**अदेदिष्ट वृत्रहा गोपतिर्गा अन्तः कृष्णाँ अरुषैर्धामभिर्गात्।**
**प्र सूनृता दिशमान ऋतेन दुरश्च विश्वा अवृणोदप स्वाः ॥२१॥**

वृत्रको नाश गर्ने र दिव्य शक्ति सङ्गठित गर्ने हे इन्द्रदेव ! हामीलाई सबैभन्दा उपयोगी ज्ञानले

सम्पन्न गराऊ। हामी आफ्ना आन्तरिक शत्रुलाई त्यसको तेजस्वी पराक्रमले विनाश गर्न सकौं। यज्ञमा हाम्रो हितकारी स्तुति स्वीकार गर्दै हाम्रा सबै दुर्गुण हटाऊ।

**शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।**
**शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥२२॥**

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकले गरेको स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौं।

[सूक्त - ३२]

**ऋषि** – विश्वामित्र गाथिन। **देवता** – इन्द्र। **छन्द** – त्रिष्टुप्।

**इन्द्र सोमं सोमपते पिबेमं माध्यन्दिनं सवनं चारु यत्ते।**
**प्रप्रथ्या शिप्रे मघवन्नृजीषिन्विमुच्या हरी इह मादयस्व ॥१॥**

सोमका स्वामी हे इन्द्रदेव ! मध्य दिनका सवनमा समर्पित गरिएको सोमरस तिमी पान गर। ऐश्वर्यवान् र सोमको आशा गर्ने हे इन्द्रदेव ! तिमी आफ्ना दुवै अश्व यहीं खोलेर उनको मुख भराएर सन्तुष्ट गराऊ।

**गवाशिरं मन्थिनमिन्द्र शुक्रं पिबा सोमं ररिमा ते मदाय।**
**ब्रह्मकृता मारुतेना गणेन सजोषा रुद्रैस्तृपदा वृषस्व ॥२॥**

हे इन्द्रदेव ! तिमी राम्ररी मन्थन गरेर दुध आदि मिसाएको तेजस्वी सोमरस पान गर। हामी तिम्रो खुसीका लागि सोम प्रदान गर्दछौं। स्तोता, मरुत्गण र रुद्रसँगै तिमी सोमले सन्तुष्ट होऊ र हाम्रा मनको रहर पूरा गराऊ।

**ये ते शुष्मं ये तविषीमवर्धन्नर्चन्त इन्द्र मरुतस्त ओजः।**
**माध्यन्दिने सवने वज्रहस्त पिबा रुद्रेभिः सगणः सुशिप्र ॥३॥**

हे इन्द्रदेव ! मरुत्गणले राम्रो स्तुति गरेर तिम्रा शत्रुनाशक बल, सैन्यबल, पराक्रम र सामर्थ्यको बढाउँछन्। वज्रजस्तै हात भएका, शिरमा टोपी लगाएका हे इन्द्रदेव ! रुद्रका पुत्र मरुत्हरूसँगै तिमी दिउँसो मध्याह्नको सवनमा सोमपान गर।

**त इन्न्वस्य मधुमद्विविप्र इन्द्रस्य शर्धो मरुतो य आसन्।**
**येभिर्वृत्रस्येषितो विवेदामर्मणो मन्यमानस्य मर्म ॥४॥**

इन्द्रदेवको सैन्यबल बढाउने मरुत्हरूले उनलाई मिठो बोलीले प्रेरित गरे। मरुत्हरूबाट प्रेरित भएका इन्द्रदवले भेद जान्न नसकिने र आफूलाई निकै बलियो ठान्ने वृत्रको भेद थाहा पाएर त्यसको वध गरे।

**मनुष्वदिन्द्र सवनं जुषाणः पिबा सोमं शश्वते वीर्याय।**
**स आ ववृत्स्व हर्यश्व यज्ञैः सरण्युभिरपो अर्णा सिसर्षि ॥५॥**

हे इन्द्रदेव ! मनुको यज्ञझैं हाम्रा यस यज्ञको पनि उपभोग गर्दै शाश्वत बल प्राप्तिका लागि सोमपान गर। हरि नामका अश्वका धनी हे इन्द्रदेव ! यजनीय र गतिमान् मरुत्हरूसँगै तिमी हाम्रा यज्ञमा आऊ र हाम्रो हितका लागि जलको वर्षा गराऊ।

**त्वमपो यद्ध वृत्रं जघन्वाँ अत्याँइव प्रासृजः सर्तवाजौ।**
**शयानमिन्द्र चरता वधेन वव्रिवांसं परि देवीरदेवम् ॥६॥**

हे इन्द्रदेव ! अन्तरिक्षको पानी रोकेर प्रकाशविहीन अवस्थामा सुतेका वृत्रलाई तिमीले वज्र प्रहार गरेर मार्‍यौ। उसले रोकेर राखेको जलराशि अश्व खोलेझैं खोलिदियौ।

**यजाम इन्नमसा वृद्धमिन्द्रं बृहन्तमृष्वमजरं युवानम्।**
**यस्य प्रिये ममतुर्यज्ञियस्य न रोदसी महिमानं ममाते ॥७॥**

यज्ञमा समर्पित हव्यरूपी आहारा पाएर जागृत हुने महान्, अति ठूला, अजर, सधैं तन्नेरी रहने इन्द्रदेवलाई हामी नियमपूर्वक पूजा गर्दछौं। यजनका लागि योग्य इन्द्रदेवको महिमा द्यावापृथिवीले पनि मापन गर्न सक्दैनन्।

इन्द्रस्य कर्म सुकृता पुरूणि व्रतानि देवा न मिनन्ति विश्वे।
दाधार यः पृथिवीं द्यामुतेमां जजान सूर्यमुषसं सुदंसाः ॥८॥

पृथ्वी, अन्तरिक्ष र द्युलोक धारण गर्ने, उषा एवं सूर्यदेव उत्पन्न गर्ने र महान् पराक्रमी इन्द्रदेवका असल कार्य र नियम सम्पूर्ण देवशक्तिहरू एकत्र भए पनि रोक्न सक्दैनन्।

अद्रोघ सत्यं तव तन्महित्वं सद्यो यज्जातो अपिबो ह सोमम्।
न द्याव इन्द्र तवसस्त ओजो नाहा न मासाः शरदो वरन्त ॥९॥

हे शत्रुतारहित इन्द्रदेव ! तिम्रो महिमा नै वास्तविक छ। किनभने तिमी प्रकट भएर नै सोमपान गर्दछौ। तिमी अत्यन्त बलशाली छौ। स्वर्ग आदि लोक, दिन, महिना र वर्षहरू पनि तिम्रा तेजको सामना गर्न सक्दैनन्।

त्वं सद्यो अपिबो जात इन्द्र मदाय सोमं परमे व्योमन्।
यद्ध द्यावापृथिवी आविवेशीरथाभवः पूर्व्यः कारुधायाः ॥१०॥

हे इन्द्रदेव ! तिमीले उत्पन्न हुनासाथ तुरुन्तै परम आकाशमा रहेर खुसी पाउनका लागि सोमपान गरेका थियौ। जब तिमी पृथ्वी र द्युलोकमा व्यापक रूपले विस्तारित भयौ अनि सबै याजकहरूले नै मनको रहर पूरा गरे।

अहन्नहिं परिशयानमर्ण ओजायमानं तुविजात तव्यान्।
न ते महित्वमनु भूदध द्यौर्यदन्यया स्फिग्या३ क्षामवस्थाः ॥११॥

हे महान् पराक्रमी इन्द्रदेव ! तिमी विभिन्न लोकमा समस्त पदार्थ उब्जाउँछौ। तिमीले जल थुनेर सुतेको अहि नामका असुरलाई मार्‍यौ। तिमीले पृथ्वीको सिँचाइ र सह्यार गर्‍यौ। तिम्रो महिमाको समानता द्युलोक वा अरू कसैले पनि गर्न सकेन।

यज्ञो हि त इन्द्र वर्धनो भूदुत प्रियः सुतसोमो मियेधः।
यज्ञेन यज्ञमव यज्ञियः सन्यज्ञस्ते वज्रमहिहत्य आवत् ॥१२॥

हे इन्द्रदेव ! हाम्रा यज्ञले तिमीलाई बलियो पार्दछ। यज्ञ आदि कार्यमा पेलेर तयार गरेको सोम तिमीलाई ज्यादै मन पर्दछ। यजन योग्य हाम्रा यज्ञमा आऊ र संरक्षित गर।

यज्ञेनेन्द्रमवसा चक्रे अर्वागैनं सुम्नाय नव्यसे ववृत्याम्।
यः स्तोमेभिर्वावृधे पूर्व्येभिर्यो मध्यमेभिरुत नूतनेभिः ॥१३॥

इन्द्रदेव पुराना, मध्यकालका र नयाँ स्तोत्रले बलिया भएका छन्। उनलाई स्तोताहरू संरक्षण प्राप्तिका लागि यज्ञका नजिक ल्याऊन्। हामी पनि नौला साधन र सुख पाउन इन्द्रदेवलाई आह्वान गरौँ।

विवेष यन्मा धिषणा जजान स्तवै पुरा पार्यादिन्द्रमह्नः।
अंहसो यत्र पीपरद्यथा नो नावेव यान्तमुभये हवन्ते ॥१४॥

हाम्रा मनमा इन्द्रदेवको स्तुति गर्ने रहर लागेका बेला हामी स्तुति गर्दछौँ। हामी टाढा रहेका अमङ्गलकारी दिनभन्दा पहिले नै स्तुति गर्दछौँ। त्यसो भएपछि इन्द्रदेवले हामीलाई दुःखबाट मुक्ति दिनेछन्। डुङ्गा चलाउनेलाई नदीका दुवै किनारका मानिसले बोलाएझैं हाम्रा माता र पिता दुवै पक्षका मानिसले इन्द्रदेवलाई बोलाउँछन्।

आपूर्णो अस्य कलशः स्वाहा सेक्तेव कोशं सिसिचे पिबध्यै।
समु प्रिया आववृत्रन्मदाय प्रदक्षिणिदभि सोमास इन्द्रम् ॥१५॥

सोमरसले भरिएको कलश इन्द्रदेवकै लागि हो। खेतीवालले खेत सिँचाइ गरेझैँ हामी इन्द्रदेवलाई स्वाहाको ध्वनिका साथ सोमरसले सिँचाइ गर्दछौँ। प्रिय सोम इन्द्रदेवको मन आनन्दित गराउनका लागि प्रदक्षिणा गर्दै उनका नजिकै पुगोस्।

न त्वा गभीरः पुरुहूत सिन्धुनाद्रयः परि षन्तो वरन्त।
इत्था सखिभ्य इषितो यदिन्द्रा दृळ्हं चिदरुजो गव्यमूर्वम् ॥१६॥

धेरैले बोलाउने हे इन्द्रदेव ! मित्रबाट प्रेरित भएर तिमीले रश्मिसमूह लुकाउने बलियो मेघ भत्कायौ। गहिरो समुद्र र चारैतिर फैलिएका पर्वतले तिमीलाई रोक्न सकेनन्।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥१७॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकले गरेका स्तुतिगान सुनिदिने हे इन्द्रदेव । हामी आश्रयको कामना गर्दै तिम्रो आह्वान गर्दछौं।

[सूक्त – ३३]

ऋषि – विश्वामित्र गाथिन। देवता – नदी इन्द्र। छन्द – त्रिष्टुप् अनुष्टुप्।

प्र पर्वतानामुशती उपस्थादश्वेइव विषिते हासमाने।
गावेव शुभ्रे मातरा रिहाणे विपाट्छुतुद्री पयसा जवेते ॥१॥

बन्धनबाट फुक्का भएर खुसीले कराउँदै कुद्ने दुई घोडी अथवा लैना बाछा भेट्न कुदेका दुई बटा माउ गाईजस्ता विपाट् र शुतुद्रि नामका नदीहरू पर्वतका फेदीबाट निस्केर समुद्रलाई भेट्ने आशाका साथ तीव्र वेगले बगिरहेका छन्।

इन्द्रेषिते प्रसवं भिक्षमाणे अच्छा समुद्रं रथ्येव याथः।
समाराणे ऊर्मिभिः पिन्वमाने अन्या वामन्यामप्येति शुभ्रे ॥२॥

हे नदी हो ! तिमीहरू दुवै इन्द्रबाट प्रेरित भएर उपयुक्त किसिमले अनुकूल दिशातर्फ प्रवाहमान होओ। हे उजिल्याउनेहरू हो ! आफ्ना तरङ्गले सबैलाई सुखी बनाउँदै तिमीहरू दुवै खाद्यान्न उत्पन्न गर्न सक्षम होओ। दुई वटा रथीझैं समुद्रतिर यात्रा गर।

अच्छा सिन्धुं मातृतमामयासं विपाशमुर्वी सुभगामगन्म।
वत्समिव मातरा संरिहाणे समानं योनिमनु सञ्चरन्ती ॥३॥

हामी आमाजस्तै स्नेह प्रदान गर्ने शुतुद्रि नदीछेउ गयौं र मनग्गे ऐश्वर्यराशिले सम्पन्न विपाशा नदीका छेउ गयौं। बाछालाई माया गर्ने गाईजस्ता ती नदीहरू एउटै समुद्रलाई लक्षित स्थान बनाएर निरन्तर रूपमा बग्दै जाँदै छन् भन्ने कुरो विश्वामित्र ऋषिले भने।

एना वयं पयसा पिन्वमाना अनु योनिं देवकृतं चरन्तीः।
न वर्तवे प्रसवः सर्गतक्तः किंयुर्विप्रो नद्यो जोहवीति ॥४॥

जलको प्रवाहले सबैको तिर्खा मेटाउँदै, देवताहरूबाट स्थापित स्थानतिर बग्दै गइरहेका निरन्तर प्रवाहमान नदीहरू आफ्ना प्रयासमा कहिल्यै थाकेर बस्दैनन्। किन विश्वामित्र ब्राह्मणले तिनको स्तुति गरिरहेका होलान् ?

रमध्वं मे वचसे सोम्याय ऋतावरीरुप मुहूर्तमेवैः।
प्र सिन्धुमच्छा बृहती मनीषावस्युरह्वे कुशिकस्य सूनुः ॥५॥

हे जलले सम्पन्न नदीहरू हो ! हाम्रा मधुर र नम्र वचन सुनेर आफ्नो गति एक क्षणका लागि रोक। हामी कुशिकका पुत्रहरू आफ्नो रक्षाका लागि तिमीहरूजस्ता नदीलाई धेरै किसिमले महान् स्तुति गरेर सम्मान गर्दछौं।

इन्द्रो अस्माँ अरदद्वज्रबाहुरपाहन्वृत्रं परिधिं नदीनाम्।
देवोऽनयत्सविता सुपाणिस्तस्य वयं प्रसवे याम उर्वीः ॥६॥

हे विश्वामित्र ! वज्रधारी इन्द्रदेवले हामीलाई खनेर निकालेका हुन्। नदीको प्रवाह रोक्ने वृत्रलाई उनले मारिदिए। सबैका प्रेरक, उत्तम हात भएका र दीप्तिमान् इन्द्रदेवले हामीलाई अघि सर्नका लागि प्रेरित गरे। उनकै आज्ञाअनुसार हामी जलले पूर्ण भएर बगेका छौं।

प्रवाच्यं शश्वधा वीर्यं१न्तदिन्द्रस्य कर्म यदहिं विवृश्चत्।
वि वज्रेण परिषदो जघानायन्नापोऽयनमिच्छमानाः ॥७॥

इन्द्रदेवले अहि नामका असुरलाई मारे। उनका त्यो पराक्रमी कर्म सधैंका लागि वर्णन गर्न योग्य छ। इन्द्रदेवले आफ्ना चारैतिर रहेका असुरहरू मारेपछि पानीको प्रवाह समुद्रलाई भेट्ने रहर गर्दै बगेको हो।

एतद्वचो जरितर्मापि मृष्ठा आ यत्ते घोषानुत्तरा युगानि।
उक्थेषु कारो प्रति नो जुषस्व मा नो नि कः पुरुषत्रा नमस्ते ॥८॥

हे स्तोता ! तिमीले आफ्ना स्तुतिको भनाइ कहिल्यै नबिर्स। आउँदा समयमा यज्ञमा यस्तै वचन

उद्‌घोषण गरेर हाम्रो सेवा गर्नू। तिमीलाई हामी नमस्कार गर्दछौं। मानिसले सम्पन्न गरेका कार्यलाई कहिल्यै हेला नगर्नू।

**ओ षु स्वसारः कारवे शृणोत ययौ वो दूरादनसा रथेन।**
**नि षू नमध्वं भवता सुपारा अधोअक्षाः सिन्धवः स्रोत्याभिः ॥९॥**

हे दिदीबहिनीजस्ता नदीहरू हो ! हाम्रो स्तुति राम्ररी सुन। तिमीहरूका नजिक हामी धेरै टाढादेखि रथ र गाडा लिएर आएका छौं। तिमीहरू आफ्ना प्रवाहसँगै झुकिदेओ र रथको धुराभन्दा तलै रहिदेओ। त्यसो भएपछि हामी सुविस्तासाथ तर्न सक्नेछौं।

**आ ते कारो शृणवामा वचांसि ययाथ दूरादनसा रथेन।**
**नि ते नंसै पीप्यानेव योषा मर्यायेव कन्या शश्वचै ते ॥१०॥**

हे स्तोता ! हामी नदीहरू तिम्रो स्तुति सुन्दछौं। त्यसैले सन्तानलाई दुध चुसाउन आमा झुकेझैं अथवा पतिका लागि पत्नी झुकिदिएझैं लागि हामी पनि झुकेका छौं।

**यदङ्ग त्वा भरताः सन्तरेयुर्गव्यन्ग्राम इषित इन्द्रजूतः।**
**अर्षादह प्रसवः सर्गतक्त आ वो वृणे सुमतिं यज्ञियानाम् ॥११॥**

हे नदीहरू हो ! पालनपोषण गर्ने पुरुषले तिमीहरूलाई पार गर्न खोज्दा ती मानिसका समूहमा इन्द्रदेवको प्रेरणा र तिमीहरूको कृपा होस् र पार गर्न सकून्। तिमीहरू यजन योग्य छौ। हामी दिनहुँ तिमीहरूका वेगवान् जलप्रवाहलाई राम्ररी स्तुति गर्दछौं।

**अतारिषुर्भरता गव्यवः समभक्त विप्रः सुमतिं नदीनाम्।**
**प्र पिन्वध्वमिषयन्तीः सुराधा आ वक्षणाः पृणध्वं यात शीभम् ॥१२॥**

हे नदीहरू हो ! भरणपोषणको लक्ष्य लिएर तिमीहरूलाई तरेर जान चाहने सबै पार लागे। ज्ञानीहरूले तिमीहरूका लागि उत्तम स्तुति अभिव्यक्त गरे। तिमीहरू अन्नदाता र उत्तम ऐश्वर्यले सम्पन्न भएर कुलोनहर पानीले परिपूर्ण गर र छिटो गतिमा जाओ।

**उद्व ऊर्मिः शम्या हन्त्वापो योक्त्राणि मुञ्चत।**
**माडुष्कृतौ व्येनसाघ्न्यौ शूनमारताम् ॥१३॥**

हे नदीहरू हो ! तिमीहरूका छाल रथका धुरामै ठोकिइरहून्। हे दुष्कर्मरहित, पापरहित, अनिन्दित नदीहरू हो ! तिमीहरूलाई कुनै बाधा नहोस्।

## [सूक्त - ३४]

ऋषि - विश्वामित्र गाथिन। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

**इन्द्रः पूर्भिदातिरद्दासमर्कैर्विदद्वसुर्दयमानो वि शत्रून्।**
**ब्रह्मजूतस्तन्वा वावृधानो भूरिदात्र आपृणद्रोदसी उभे ॥१॥**

शत्रुका किल्ला ध्वस्त गर्ने महिमाशाली, धनवान् इन्द्रदेवले आफ्नै तेजले शत्रुलाई मारेर भस्म गराए। स्तुतिले प्रेरित र शरीरले दरिलो हुँदै विभिन्न अस्त्र धारण गर्ने इन्द्रदेवले द्यावा र पृथिवी दुवैलाई पूर्ण गराए।

**मखस्य ते तविषस्य प्र जूतिमियर्मि वाचममृताय भूषन्।**
**इन्द्र क्षितीनामसि मानुषीणां विशां दैवीनामुत पूर्वयावा ॥२॥**

हे इन्द्रदेव ! तिमी पूजनीय र बलशाली छौ। तिमीलाई विभूषित गर्दै हामी अमरत्व प्राप्तिका लागि प्रेरक स्तोत्रको उच्चारण गर्दछौं। हामी मानिस र देवताहरूका लागि तिमी अगुवा भइदेऊ।

**इन्द्रो वृत्रमवृणोच्छर्धनीतिः प्र मायिनाममिनाद्वर्पणीतिः।**
**अहन्व्यंसमुशधग्वनेष्वाविर्धेना अकृणोद्राम्याणाम् ॥३॥**

नीतिमा कुशल इन्द्रदेवले वृत्रासुरलाई रोके। कार्यकुशल इन्द्रदेवले शत्रुको वध गर्ने इच्छा गरेर मायावी असुरहरू मारे। उनले वनमा लुकेको काँधविनाका असुरलाई नष्ट गरेर अन्धकारमा लुकाइएका गाई प्रकट गरे।

**इन्द्रः स्वर्षा जनयन्नहानि जिगायोशिग्भिः पृतना अभिष्टिः।**
**प्रारोचयन्मनवे केतुमह्नामविन्दज्ज्योतिर्बृहते रणाय ॥४॥**

स्वर्गका सुखका निम्ति प्रेरणा दिने इन्द्रदेवले दिन उत्पन्न गरेर युद्धको रहर गर्ने मरुत्‌हरूसँग शत्रु सेना पराजित गरे। त्यसपछि मानिसका लागि दिनको सूचना दिने सूर्यदेव प्रकट गरे। उनले महान् युद्धमा विजय प्राप्त गर्ने दिव्य ज्योति प्राप्त गरे।

इन्द्रस्तुजो बर्हणा आ विवेश नृवद्दधानो नर्या पुरूणि।
अचेतयद्धिय इमा जरित्रे प्रेमं वर्णमतिरच्छुक्रमासाम् ॥५॥

अनन्त सामर्थ्य धारण गरेर नेतृत्व गर्ने इन्द्रदेवले अवरोध उत्पन्न गर्ने शत्रुपक्षका सेनाका बीचमा पसेर छिन्नभिन्न गराए। उनले स्तुति गर्नेहरूका लागि उषालाई चैतन्य गराए र उनका स्वच्छ वर्णको दीप्ति बढाइदिए।

महो महानि पनयन्त्यस्येन्द्रस्य कर्म सुकृता पुरूणि।
वृजनेन वृजिनान्त्सं पिपेष मायाभिर्दस्यूँरभिभूत्योजाः ॥६॥

स्तोताहरू महान् पराक्रमी इन्द्रदेवका असल कर्मको गुणगान गर्दछन्। इन्द्रदेव आफ्ना सामर्थ्यले शत्रु परास्त गर्दछन्। उनले आफ्नै बलले मायाद्वारा बलवान् दस्युलाई पूर्ण रूपमा नष्ट गरे।

युधेन्द्रो मह्ना वरिवश्चकार देवेभ्यः सत्पतिश्चर्षणिप्राः।
विवस्वतः सदने अस्य तानि विप्रा उक्थेभिः कवयो गृणन्ति ॥७॥

देववृत्तिका प्रणेता, अधिपति र मानिसलाई शक्ति प्रदान गरेर उनीहरूको रहर पूरा गराउने इन्द्रदेवले आफ्नै महत्त्वले युद्धमा शत्रु परास्त गरे। उनको धन लिएर स्तोतालाई दिए। बुद्धिमान् स्तोताहरू यजमानका घरमा इन्द्रदेवका त्यस असल कामको चर्चा र प्रशंसा गर्दछन्।

सत्रासाहं वरेण्यं सहोदां ससवांसं स्वरपश्च देवीः।
ससान यः पृथिवीं द्यामुतेमामिन्द्रं मदन्त्यनु धीरणासः ॥८॥

स्तोताहरू शत्रुविजेता, स्वीकार्य, बलप्रदाता, स्वर्गीय सुख र दीप्तिमान् जलका अधिपति इन्द्रदेवलाई उत्तम स्तुतिले प्रार्थना गर्दछन्। उनले द्युलोक र पृथिवीलोकलाई आफ्ना ऐश्वर्यका बलमा अड्याएका छन्।

ससानात्याँ उत सूर्यं ससानेन्द्रः ससान पुरुभोजसं गाम्।
हिरण्ययमुत भोगं ससान हत्वी दस्यून्प्रार्यं वर्णमावत् ॥९॥

इन्द्रदेवले अत्य नामको उडुवा घोडा दान गरे। सूर्य र पर्याप्त भोजन प्रदान गर्ने गाई दान गरे। सुनौलो अलङ्कार र भोज्य पदार्थ दान गरे। दस्युलाई मारेर आर्यको रक्षा गरे।

इन्द्र ओषधीरसनोदहानि वनस्पतीँरसनोदन्तरिक्षम्।
बिभेद वलं नुनुदे विवाचोऽथाभवद्दमिताभिक्रतूनाम् ॥१०॥

इन्द्रदेवले प्राणीको कल्याणका लागि औषधि प्रदान गरेका छन्, दिनको उज्यालो दान गरेका छन्, वनस्पति र अन्तरिक्ष प्रदान गरेका छन्। उनले वल नामका असुरलाई गिँडे, प्रतिवादीलाई पर पुऱ्याए र युद्धका अगाडि उभिएका शत्रु दमन गरेका छन्।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥२२॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकहरूले गरेको स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिम्रो आह्वान गर्दछौँ।

## [सूक्त - ३५]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

तिष्ठा हरी रथ आ युज्यमाना याहि वायुर्न नियुतो नो अच्छ।
पिबास्यन्धो अभिसृष्टो अस्मे इन्द्र स्वाहा ररिमा ते मदाय ॥१॥

हे इन्द्रदेव ! वायुको नियुत नामको अश्व नारेको जस्तै तिम्रो हरि नामको अश्व नारेका रथमा बसेर हामीकहाँ आऊ। हामीले प्रदान गरेको हविष्यान्नरूपी सोमरस पान गर। तिमीलाई खुसी पार्न हामी स्वाहाका साथ सोमरस प्रदान गर्दछौँ।

उपाजिरा पुरुहूताय सप्ती हरी रथस्य धूर्ष्वा युनज्मि।
द्रवद्यथा सम्भृतं विश्वतश्चिदुपेमं यज्ञमा वहात इन्द्रम् ॥२॥

अनेकौँले बोलाउने गरेका इन्द्रदेवको आगमन चाँडै होस् भनेर रथका अघिल्ला भागमा दुई वटा अश्व नारिएका हुन्छन्। ती अश्वले जतासुकैबाट इन्द्रदेवलाई सबै किसिमका साधनले सम्पन्न यस दैवयज्ञमा तुरुन्तै ल्याऊन्।

उपो नयस्व वृषणा तपुष्पोतेमव त्वं वृषभ स्वधावः।
ग्रसेतामश्वा वि मुचेह शोणा दिवेदिवे सदृशीरद्धि धानाः ॥३॥

हे खोजेको कुरो पुऱ्याइदिने र अन्नका धनी इन्द्रदेव ! तिमी बलवान् एवं शत्रुबाट रक्षा गर्ने अश्वलाई नजिकै लिएर आऊ र यजमानको रक्षा गर। तिम्रा राता अश्वले यहाँ आहार खान सकून् भनेर खोल। तिमी दिनहुँ असल हविष्यान्न ग्रहण गर।

ब्रह्मणा ते ब्रह्मयुजा युनज्मि हरी सखाया सधमाद आशू।
स्थिरं रथं सुखमिन्द्राधितिष्ठन्प्रजानन्विद्वाँ उप याहि सोमम् ॥४॥

हे इन्द्रदेव ! मन्त्रले नारिने, युद्धमा कीर्ति सम्पन्न, मित्रभाव सम्पन्न, हरि नामका दुवै अश्वलाई हामी मन्त्रले नै योजित गर्दछौं। हे इन्द्रदेव ! बलियो र सुखदायी रथमा बसेर सोमयज्ञका नजिक आऊ। तिमी सबै खालका यज्ञका विषयमा जान्ने विद्वान् हौ।

मा ते हरी वृषणा वीतपृष्ठा नि रीरमन्यजमानासो अन्ये।
अत्यायाहि शश्वतो वयं तेऽरं सुतेभिः कृणवाम सोमैः ॥५॥

हे इन्द्रदेव ! तिम्रा बलवान् र सुन्दर पिठ्युँ भएका हरि नामका अश्वलाई अन्य यजमानले पनि सन्तुष्ट गराऊन्। हामी पेलेर तयार गरेको सोमरसले तिमीलाई राम्ररी सन्तुष्ट गराउँछौं। तिमी अरू सबै यजमानहरूलाई छोडेर हामीकहाँ आऊ।

तवायं सोमस्त्वमेह्यर्वाङ् शश्वत्तमं सुमना अस्य पाहि।
अस्मिन्यज्ञे बर्हिष्या निषद्या दधिष्वेमं जठर इन्दुमिन्द्र ॥६॥

हे इन्द्रदेव ! यो सोमरस तिम्रै लागि हो। हामीतिर तिमी फर्क र खुसी मनले सोमरस पान गर। हाम्रा यज्ञमा कुशका आसनमा बसेर सोम आफ्ना पेटमा पुऱ्याऊ।

स्तीर्णं ते बर्हिः सुत इन्द्र सोमः कृता धाना अत्तवे ते हरिभ्याम्।
तदोकसे पुरुशाकाय वृष्णे मरुत्वते तुभ्यं राता हवींषि ॥७॥

हे इन्द्रदेव ! तिम्रा लागि कुशको आसन ओछ्याएर सोमरस तयार पारेका छौं। तिम्रा दुवै अश्वले खाने दाना तयार छ। यो यज्ञ तिम्रै निवासस्थान हो। तिमी सामर्थ्यवान्, खोजेको कुरो पुऱ्याइदिने र मरुत्‌रूपी सेनाले सम्पन्न छौ। तिम्रा लागि हवि दिएका छौं।

इमं नरः पर्वतास्तुभ्यमापः समिन्द्र गोभिर्मधुमन्तमक्रन्।
तस्यागत्या सुमना ऋष्व पाहि प्रजानन्विद्वान्पथ्याऽ अनु स्वाः ॥८॥

हे इन्द्रदेव ! ऋत्विकहरूले तिम्रा लागि ढुङ्गाले पेलेर निकालेको, जल मिसाएको सोमरस तयार गरेका छन्। दुध मिसाएर त्यसलाई अझै स्वादिलो पारेका छन्। हे सबै कुरो जानेका विद्वान् इन्द्रदेव ! हाम्रो स्तुति बुझेर असल मनले सोमपान गर।

याँ आभजो मरुत इन्द्र सोमे ये त्वामवर्धन्नभवन्गणस्ते।
तेभिरेतं सजोषा वावशानोऽग्नेः पिब जिह्वया सोममिन्द्र ॥९॥

हे इन्द्रदेव ! तिमीले सोमयागमा सम्मानित गरेका मरुत्‌हरूले तिमीलाई बलियो बनाउँछन्। तिनीहरू र तिम्रो सहायता गर्ने अरू सबैसँग सोमको अभिलाषा गर्दै अग्निरूपी जिब्राले सोम पान गर।

इन्द्र पिब स्वधया चित्सुतस्याग्नेर्वा पाहि जिह्वया यजत्र।
अध्वर्योर्वा प्रयतं शक्र हस्ताद्धोतुर्वा यज्ञं हविषो जुषस्व ॥१०॥

हे यज्ञ गरिने इन्द्रदेव ! पेलेर तयार पारेको सोमरस आफ्नै पराक्रमले अथवा अग्निरूपी जिब्राले पान गर। अध्वर्युका हातले दिएर पान गर अथवा होताले हव्य आदि युक्त गरेर दिएको यज्ञको सेवन गर।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥११॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकहरूले गरेको स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिम्रो आह्वान गर्दछौं।

[सूक्त - ३६]

ऋषि – विश्वामित्र गाथिन। देवता – इन्द्र। छन्द – त्रिष्टुप्।

**इमामू षु प्रभृतिं सातये धाः शश्वच्छश्वदूतिभिर्यादमानः।**
**सुतेसुते वावृधे वर्धनेभिर्यः कर्मभिर्महद्भिः सुश्रुतो भूत् ॥१॥**

हे इन्द्रदेव ! सधैँ संरक्षण सामर्थ्यले युक्त रहेर हामीले गरेका स्तुति सुन र हविष्यान्नका रूपमा चढाइएको सोम ग्रहण गर। तिमी महान् कार्यले प्रसिद्ध भएका छौ। तिमी प्रत्येक सोमसवनमा पुष्टिदायक हव्य आदिले सशक्त हुने गर्दछौ।

**इन्द्राय सोमाः प्रदिवो विदाना ऋभुर्येभिर्वृषपर्वा विहायाः।**
**प्रयम्यमानान्प्रति षू गृभायेन्द्र पिब वृषधूतस्य वृष्णः ॥२॥**

हे इन्द्रदेव ! हामी द्युलोकबाट तिम्रा लागि सोम प्राप्त गर्दछौँ। त्यो पिएर तिमी बलिष्ठ, सुदृढ, महान् र दीप्तिमान् हुन्छौ। हे इन्द्रदेव ! तिमी शत्रु तर्साउने र बल प्रदान गर्ने हुनाले ढुङ्गाले राम्रोसँग पेलेर तयार गरेको सोम पान गर।

**पिबा वर्धस्व तव घा सुतास इन्द्र सोमासः प्रथमा उतेमे।**
**यथापिबः पूर्व्याँ इन्द्रसोमाँ एवा पाहि पन्यो अद्या नवीयान् ॥३॥**

हे इन्द्रदेव ! सोमपान गरेर बलिया होऊ। तिम्रा लागि पुरानो र नयाँ सोम पेलेर तयार गरेका छौँ। हे स्तुत्य इन्द्रदेव ! तिमीले पहिले जसरी सोमपान गरेका थियौ उसरी नै आज यो नयाँ सोम पनि पान गर।

**महाँ अमत्रो वृजने विरप्श्युग्रं शवः पत्यते धृष्ण्वोजः।**
**नाह विव्याच पृथिवी चनैनं यत्सोमासो हर्यश्वममन्दन् ॥४॥**

इन्द्रदेव महान् छन्, शत्रुलाई परास्त गर्ने खालका छन् र अत्यन्त बलवान् छन्। यिनको भयानक बल र ओज सर्वत्र विस्तृत हुन्छ। सोम पिएर सन्तुष्ट भएपछि पृथ्वी र द्युलोकले पनि यिनलाई थाम्न सक्दैनन्।

**महाँ उग्रो वावृधे वीर्याय समाचक्रे वृषभः काव्येन।**
**इन्द्रो भगो वाजदा अस्य गावः प्र जायन्ते दक्षिणा अस्य पूर्वीः ॥५॥**

अत्यन्त बलवान् र पराक्रमी इन्द्रदेव शौर्ययुक्त ठूला कार्यका लागि प्रसिद्ध छन्। खोजेको कुरो प्रदान गर्ने र ऐश्वर्यवान् इन्द्रदेवलाई उत्तम स्तुतिले प्रार्थना गर्दछौँ। यिनका दिव्य रश्मिले पोषण प्रदान गर्दछ। यिनका दान आदि कर्म पनि अति प्रसिद्ध छन्।

**प्र यत्सिन्धवः प्रसवं यथायन्नापः समुद्रं रथ्येव जग्मुः।**
**अतश्चिदिन्द्रः सदसो वरीयान्यदीं सोमः पृणति दुग्धो अंशुः ॥६॥**

मनका रहरले सारा नदीहरू दूरदेशका समुद्रमा पुगेर मिसिन्छन्। तिनको जल रथझैं समुद्रतिर कुदिरहेको हुन्छ। त्यसै गरीकन दुध मिसाइएको अलिकति सोमरसले नै महान् इन्द्रदेवलाई पूर्ण सन्तुष्ट गराउँछ। त्यसले सन्तुष्ट भएपछि स्वर्गभन्दा पनि अधिक श्रेष्ठ र महान् हुन्छन्।

**समुद्रेण सिन्धवो यादमाना इन्द्राय सोमं सुषुतं भरन्तः।**
**अंशुं दुहन्ति हस्तिनो भरित्रैर्मध्वः पुनन्ति धारया पवित्रैः ॥७॥**

समुद्र भेट्ने रहर भएका नदीहरूले समुद्रलाई नै खँदिलो बनाएझैं अध्वर्युहरू ढुङ्गा लिएका हातले इन्द्रदेवका लागि सोमरस पेलेर तयार गर्दछन्। आफ्नै पाखुरीले सोमका लहरा दोहन गर्दछन् र एउटै धारो लगाएर चाल्नीले सोमरस छान्दछन्।

**ह्रदाइव कुक्षयः सोमधानाः समीं विव्याच सवना पुरूणि।**
**अन्ना यदिन्द्रः प्रथमा व्याश वृत्रं जघन्वाँ अवृणीत सोमम् ॥८॥**

इन्द्रदेवको पेट पनि तालजत्तिकै फराकिलो छ। यिनलाई अनेकौँ सोमयज्ञहरूले सन्तुष्ट गराउँछन्। इन्द्रदेवले सबैभन्दा पहिले सोमरसरूपी हविष्यान्न भक्षण गरे, त्यसपछि वृत्र मारेर अन्य देवताहरूका लागि सोम ग्रहण गरे।

**आ तू भर माकिरेतत्परि ष्ठाद्विद्मा हि त्वा वसुपतिं वसूनाम्।**
**इन्द्र यत्ते माहिनं दत्रमस्त्यस्मभ्यं तद्धर्यश्व प्र यन्धि ॥९॥**

हे इन्द्रदेव ! हामीलाई चाँडै अपार धन र वैभव प्रदान गर। धनको दान गर्नमा तिमीलाई कसले

रोक्न सक्छ र ? तिमीलाई धेरै धनका अधिपतिका रूपमा हामीले चिनेका छौँ। हे हरि नामका अश्वका स्वामी इन्द्रदेव ! हामीलाई काम लाग्ने जेजस्तो धन तिमीसित छ, त्यो हामीलाई प्रदान गर।

**अस्मे प्र यन्धि मघवन्नृजीषिन्निन्द्र रायो विश्ववारस्य भूरेः।**
**अस्मे शतं शरदो जीवसे धा अस्मे वीराञ्छश्वत इन्द्र शिप्रिन् ॥१०॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमी उदार भावनाका छौ। सबैले रुचाउने खालको प्रशस्त धन र ऐश्वर्य हामीलाई तिमी प्रदान गर। हे राम्रो टोपी लगाउने इन्द्रदेव ! हामीलाई बाँच्नका लागि सय वर्षको आयु प्रदान गर र धेरै वीर पुत्रहरू प्रदान गर।

**शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।**
**शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥२२॥**

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकले गरेको स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौँ।

## [सूक्त - ३७]

**ऋषि** - विश्वामित्र गाथिन। **देवता** - इन्द्र। **छन्द** - गायत्री अनुष्टुप्।

**वार्त्रहत्याय शवसे पृतनाषाह्याय च। इन्द्र त्वा वर्तयामसि ॥१॥**

हे इन्द्रदेव ! वृत्र नामको असुर मार्नका लागि र शत्रुको सेना पराजित गर्नका लागि शक्ति पाऊँ भन्ने निवेदन तिमीसित हामी गर्दछौँ।

**अर्वाचीनं सु ते मन उत चक्षुः शतक्रतो। इन्द्र कृण्वन्तु वाघतः ॥२॥**

सयौँ अश्वमेध आदि यज्ञ पूरा गरिसकेका हे इन्द्रदेव ! स्तोताले स्तुति गर्दै तिम्रो प्रसन्नता, अनुग्रह र कृपादृष्टि हामीतिर प्रेरित गरून्।

**नामानि ते शतक्रतो विश्वाभिर्गीर्भिरीमहे। इन्द्राभिमातिषाह्ये ॥३॥**

अभिमानी शत्रु पराजित गर्ने, सयौँ असल कर्म गरेका हे इन्द्रदेव ! युद्धमा हामी सम्पूर्ण स्तुति र सूक्तबाट तिम्रो यश एवं वैभवको बयान गर्दछौँ।

**पुरुष्टुतस्य धामभिः शतेन महयामसि। इन्द्रस्य चर्षणीधृतः ॥४॥**

धेरैले स्तुति गरेका, महान् तेजस्वी, मानिसहरूलाई पालनपोषण गर्ने इन्द्रदेवलाई हामी स्तुति गर्दछौँ।

**इन्द्रं वृत्राय हन्तवे पुरुहूतमुप ब्रुवे। भरेषु वाजसातये ॥५॥**

जसलाई धेरैले बोलाइरहन्छन्, उनै वृत्रको वध गर्ने इन्द्रदेवलाई हामी भरणपोषणका लागि बोलाउँछौँ।

**वाजेषु सासहिर्भव त्वामीमहे शतक्रतो। इन्द्र वृत्राय हन्तवे ॥६॥**

हे सयौँ यज्ञ गर्ने इन्द्रदेव ! शत्रुलाई युद्धमा विनाश गर्ने तिमीसित हामीहरू वृत्रको विनाशका लागि प्रार्थना गर्दछौँ।

**द्युम्नेषु पृतनाज्ये पृत्सुतूर्षु श्रवःसु च। इन्द्र साक्ष्वाभिमातिषु ॥७॥**

हाम्रा अभिमानी शत्रु विनाश गरिदिने हे इन्द्रदेव ! युद्धबाट तेजस्वी धन प्राप्तिका लागि तिमी सबै बलवान् शत्रुलाई पराजित गर।

**शुष्मिन्तमं न ऊतये द्युम्निनं पाहि जागृविम्। इन्द्र सोमं शतक्रतो ॥८॥**

हे सयौँ यज्ञ सम्पन्न गरेका इन्द्रदेव ! हामीजस्ता याजकलाई संरक्षण प्रदान गर्नका लागि तिमी अत्यन्त बलप्रदायक, दीप्तिमान्, चेतनासम्पन्न सोमरस पान गर।

**इन्द्रियाणि शतक्रतो या ते जनेषु पञ्चसु। इन्द्र तानि त आ वृणे ॥९॥**

हे सयौँ यज्ञ सम्पन्न गरेका इन्द्रदेव ! पाँचै किसिमका मानिससित भएका सामर्थ्यलाई तिमी शक्तिका रूपमा स्वीकार गर।

**अगन्निन्द्र श्रवो बृहद्द्युम्नं दधिष्व दुष्टरम्। उत्ते शुष्मं तिरामसि ॥१०॥**

हे इन्द्रदेव ! यो गतिलो हविष्यान्न तिमीकहाँ जाओस्। तिमी शत्रुहरूका लागि अति दुर्लभ र तेजस्वी सोमरस ग्रहण गर। हामी तिम्रो बल बढाइदिन्छौँ।

अर्वावतो न आ गह्यथो शक्र परावतः।
उ लोको यस्ते अद्रिव इन्द्रेह तत आग्रहि ॥११॥
हे वज्र हातमा लिने इन्द्रदेव ! तिमी नजिकबाट, टाढाबाट वा तिमीलाई ज्यादै मन परेको लोकबाट पनि हामीकहाँ आऊ।

[सूक्त - ३८]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अभि तष्टेव दीधया मनीषामत्यो न वाजी सुधुरो जिहानः।
अभि प्रियाणि मर्मृशत्पराणि कवींरिच्छामि सन्दृशे सुमेधाः ॥१॥
हे स्तोता ! सिकर्मीझैँ तिमी पनि इन्द्रदेवका लागि राम्रा स्तोत्रको निर्माण गर। असल धुरामा बाँधिएका वेगशाली अश्वजस्तै कर्ममा प्रवृत्त रहँदै र इन्द्रदेवका लागि प्रिय स्तुति रचना गर्ने मेधासम्पन्न उत्तम कविहरूको दर्शन गर्ने रहर हामी गर्दछौँ।

इनोत पृच्छ जनिमा कवीनां मनोधृतः सुकृतस्तक्षत द्याम्।
इमा उ ते प्रण्योऽ वर्धमाना मनोवाता अध नु धर्मणि ग्मन् ॥२॥
हे इन्द्रदेव ! कविका जन्मका विषयमा जसले मनोबल धारण गरेर आफ्ना पुण्य कर्मले स्वर्गको निर्माण गरेका थिए, उनै आचार्यहरूसित सोध। यस यज्ञबाट तिम्रा मनलाई आनन्द प्रदान गर्ने खालको, तिम्रै निम्ति बनाइएको स्तुति तिमीकहाँ जान्छ।

नि षीमिदत्र गुह्या दधाना उत क्षत्राय रोदसी समञ्जन्।
सं मात्राभिर्ममिरे येमुरुर्वी अन्तर्मही समृते धायसे धुः ॥३॥
कविले गोप्य कर्मको सम्पादन गर्दै बल प्राप्त गर्नका निम्ति द्यावापृथिवीलाई एकासमा सम्वद्ध तुल्याए र तिनलाई आआफ्नै सीमामा सीमित गराए। एकापसमा सम्वद्ध, विस्तृत र महान् द्यावापृथिवीलाई नियन्त्रित गरे। यी दुईका बीचमा दुवैलाई धारण गर्ने अन्तरिक्ष स्थापित गराए।

आतिष्ठन्तं परि विश्वे अभूषञ्छ्रियो वसानश्चरति स्वरोचिः।
महत्तद्वृष्णो असुरस्य नामा विश्वरूपो अमृतानि तस्थौ ॥४॥
समस्त कविले रथमा बसेका इन्द्रदेवलाई महिमामय बनाए। इन्द्रदेव आफ्नै दीप्तिले दीप्त भएर शोभायमान रूपमा विचरण गर्दछन्। सबैका लागि जीवनमा प्राण सञ्चार गर्ने, उनका उत्तम सङ्कल्पलाई पूर्ण गराउने इन्द्रदेवको कीर्ति महान् छ। सम्पूर्ण रूपले युक्त भएर उनी अमृत तत्त्वमा रहन्छन्।

असूत पूर्वो वृषभो ज्यायानिमा अस्य शुरुधः सन्ति पूर्वीः।
दिवो नपाता विदथस्य धीभिः क्षत्रं राजाना प्रदिवो दधाथे ॥५॥
मन लागेको फल प्रदान गर्ने, पुरातन र सबैभन्दा ठूला देवता इन्द्रले जलवर्षा गराए। विपुल जलराशिले तिर्खा मेटायो। द्युलोकलाई धारण गर्ने दीप्तिमान् वरुण र इन्द्रदेव तेजस्वी याजकको स्तुति सुनेर उनीहरूका लागि धन जम्मा गर्दछन्।

त्रीणि राजाना विदथे पुरूणि परि विश्वानि भूषथः सदांसि।
अपश्यमत्र मनसा जगन्वान्व्रते गन्धर्वाँ अपि वायुकेशान् ॥६॥
हे इन्द्र र वरुणदेव ! तिमीहरू यस यज्ञमा सम्पूर्ण र व्यापक तीनै वटा सवन सजाओ। हे इन्द्रदेव ! तिमी यज्ञमा गएका थियौ, किनभने हामीले यस यज्ञमा वायुले जगर हल्लाउँदै गरेका अश्वहरू देख्यौँ।

तदिन्न्वस्य वृषभस्य धेनोरा नामभिर्ममिरे सक्म्यं गोः।
अन्यदन्यदसुर्यं१ वसाना नि मायिनो ममिरे रूपमस्मिन् ॥७॥
साँढेसहितको गाई र गाईलाई जुन प्रतिभाशालीले दुहुने काम गरे उनले नयाँ शक्तिका रूपमा इन्द्रलाई भेटे।

तदिन्न्वस्य सवितुर्नकिर्मे हिरण्ययीममतिं यामशिश्रेत्।
आ सुष्टुती रोदसी विश्वमिन्वे अपीव योषा जनिमानि वव्रे ॥८॥
सूर्यदेवको सुनौलो दीप्तिलाई कसैले नाश गर्न सक्दैन। यस दीप्तिको आश्रय जसले स्वीकार गर्दछ, त्यो उत्तम स्तुतिले प्रशंसित हुन्छ। आमाले आफ्ना सन्तान सह्यारेझैँ देवताहरू सबै कुरो दिन सक्ने द्यावा र पृथिवीबाट स्वीकार गर्निन्छन्।

युवं प्रत्नस्य साधथो महो यद्दैवी स्वस्तिः परि णः स्यातम्।
गोपाजिह्वस्य तस्थुषो विरूपा विश्वे पश्यन्ति मायिनः कृतानि ॥९॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू पुराना स्तोतालाई अनेकौं किसिले हित गर्दछौ। उनका निम्ति स्वर्गजस्तै सुखको व्यवस्था गर्दछौ। तिमीहरू हामीलाई सबै तिरबाट संरक्षित गर। समस्त मायावी शक्तिमा दक्ष तिमीहरू हामीलाई आफ्ना आश्रयमा राख। संरक्षण गर्ने वचन दिँदै तिमीहरूका सबै खालका काम हामी हेर्दछौं भनी वचन देओ।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥१०॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकले गाएका स्तुति सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौं।

[सूक्त - ३९]

**ऋषि** - विश्वामित्र गाथिन। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

इन्द्रं मतिर्हृद आ वच्यमानाच्छा पतिं स्तोमतष्टा जिगाति।
या जागृविर्विदथे शस्यमानेन्द्र यत्ते जायते विद्धि तस्य ॥१॥

हे सबैलाई पाल्ने इन्द्रदेव ! स्तोताहरूले भावपूर्ण रूपले उच्चारण गरेको स्तुति सोझै तिमीकहाँ पुग्दछ। तिमीलाई चेतन गराउन यज्ञमा स्तुति उच्चारण गरिन्छ। तिम्रा लागि नै स्तुति उत्पन्न भएको हो भन्ने तिमीले बुझ।

दिवश्चिदा पूर्व्या जायमाना वि जागृविर्विदथे शस्यमाना।
भद्रा वस्त्राण्यर्जुना वसाना सेयमस्मे सनजा पित्र्या धीः ॥२॥

हे इन्द्रदेव ! सूर्यभन्दा पहिले उत्पन्न भएको स्तुति यज्ञमा उच्चरित हुँदा तिमीलाई चेतन गराउँछ। हितकारी र स्वच्छ तेज धारण गर्ने स्तुति हाम्रा लागि पुर्खाको नासो हो।

यमा चिदत्र यमसूरसूत जिह्वाया अग्रं पतदा ह्यस्थात्।
वपूंषि जाता मिथुना सचेते तमोहना तपुषो बुध्न एता ॥३॥

उत्पन्न गर्ने विशेषता हुनाले उषाले अश्विनीकुमारलाई उत्पन्न गराइन्। उनीहरूको प्रशंसा गर्नका लागि जिब्राको टुप्पो सक्सकाउन थाल्यो। दिनको सुरुमै अन्धकार नाश गर्ने अश्विनीकुमारको यो जोडी जन्मनासाथ स्तोत्रले परिचित भएको छ।

नकिरेषां निन्दिता मर्त्येषु ये अस्माकं पितरो गोषु योधाः।
इन्द्र एषां दृंहिता माहिनावानुद्गोत्राणि ससृजे दंसनावान् ॥४॥

युद्ध गर्न सिपालु हाम्रा पुर्खाहरूको निन्दा असुरहरूले गर्न सक्ने हामीभित्र कोही पनि छैन। महिमावान् र असल कर्म भएका इन्द्रदेव यिनलाई र यिनका गोत्रलाई गतिलो मानिएको स्वर्गलोकमा स्थापित गर्दछन्।

सखा ह यत्र सखिभिर्नवग्वैरभिज्ञ्वा सत्वभिर्गा अनुग्मन्।
सत्यं तदिन्द्रो दशभिर्दशग्वैः सूर्यं विवेद तमसि क्षियन्तम् ॥५॥

नौं वटा अश्वयुक्त बलवान् मित्ररूप अङ्गिराहरूका साथ गाईको खोजीमा निस्केका इन्द्रदेवले बाक्लो अँध्यारोभित्र पुरिएका प्रकाशपुञ्ज सूर्यलाई भेटे।

इन्द्रो मधु सम्भृतमुस्रियायां पद्वद्विवेद शफवन्नमे गोः।
गुहा हितं गुह्यं गूळ्हमप्सु हस्ते दधे दक्षिणे दक्षिणावान् ॥६॥

इन्द्रदेवले दुधालु गाईबाट मिठो दुध पाए। भित्र किसिमका खुट्टा हुने चरा र खुर भएका पशुसहित अनेकौं धन पाए। दानी इन्द्रदेवले गुफाभित्रको अन्तरिक्षका जलमा रहेको गोप्य धन दाहिने हातमा लिए।

ज्योतिर्वृणीत तमसो विजानन्नारे स्याम दुरितादभीके।
इमा गिरः सोमपाः सोमवृद्ध जुषस्वेन्द्र पुरुतमस्य कारोः ॥७॥

विशिष्ट ज्ञानले सम्पन्न इन्द्रदेवले गहिरो अन्धकारमा ज्योति प्रकट गरे। हामी सबै पापबाट डर नहुने टाढाको ठाउँमा रहौं। हे सोमपान गरेर बल बढाउने इन्द्रदेव ! असल खालको स्तुति गर्नेहरूको स्तुति स्वीकार गर।

ज्योतिर्यज्ञाय रोदसी अनु ष्यादारे स्याम दुरितस्य भूरेः।
भूरि चिद्धि तुजतो मर्त्यस्य सुपारासो वसवो बर्हणावत् ॥८॥
यज्ञका लागि सूर्यदेवले द्यावापृथिवीलाई प्रकाशित गरून्। हामी विभिन्न खालका पापबाट टाढा रहौं। हे दुःखबाट जोगाउने वसुहरू हो ! हामी यजन गर्ने मानिसहरूलाई तिमी धनको ठूलो थुप्रो दिएर धनी गराऊ।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥२२॥
धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकहरूले गरेको स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौं।

[सूक्त – ४०]

**ऋषि** – विश्वामित्र गाथिन। **देवता** – इन्द्र। **छन्द** – गायत्री।

इन्द्र त्वा वृषभं वयं सुते सोमे हवामहे। स पाहि मध्वो अन्धसः ॥१॥
हे साधकहरूका मनको रहर पूरा गराउने इन्द्रदेव ! पेलेर तयार पारेको सोमरस पान गर्न तिमीलाई हामी बोलाउदै छौं। अति मिठो हविष्यान्न सहितको सोमरस पान गर।

इन्द्र क्रतुविदं सुतं सोमं हर्य पुरुष्टुत। पिबा वृषस्व तातृपिम् ॥२॥
हे हरि नामका अश्वका अधिपति र धेरै तिरबाट प्रशंसा पाइरहने इन्द्रदेव ! तिमी चाहिएका कुराको वर्षा गराउँछौ। पेलेर तयार गरेको सोम तिमीलाई सन्तुष्ट गराउनका लागि यज्ञमा नियमपूर्वक तयार गरिएको छ, तिमी यो पान गर।

इन्द्र प्र णो धितावानं यज्ञं विश्वेभिर्देवेभिः। तिर स्तवान विश्पते ॥३॥
हे सबैले स्तुति गरेका र जनताका रक्षक इन्द्रदेव ! तिमी सम्पूर्ण पूजनीय देवताहरूसँगै हाम्रो यो हव्य आदि द्रव्यले पूर्ण भएको यज्ञ दरिलो बनाइदेऊ।

इन्द्र सोमाः सुता इमे तव प्र यन्ति सत्पते। क्षयं चन्द्रास इन्दवः ॥४॥
हे सत्यको नियम पालन गर्नेहरूका रक्षक इन्द्रदेव ! दीप्तियुक्त, आनन्ददायक र पेलेर तयार पारेको सोमरस तिमीतिर फर्किएको छ, त्यसलाई स्वीकार गर।

दधिष्वा जठरे सुतं सोममिन्द्र वरेण्यम्। तव द्युक्षास इन्दव ॥५॥
हे इन्द्रदेव ! पेलेर तयार पारेको यो सोमरस तिमीले नै स्वीकार गर्न योग्य छ। किनभने यो दीप्तिमान् भएकाले स्वर्गलोकमा तिमीसितै रहन योग्य छ। तिमी यसलाई आफ्नै पेटमा राखिदेऊ।

गिर्वणः पाहि नः सुतं मधोर्धाराभिरज्यसे। इन्द्र त्वादातमिद्यशः ॥६॥
हे स्तुति योग्य इन्द्रदेव ! हामीले छानेको सोमरस खाऊ। किनभने यस आनन्ददायी सोमरसका धाराले तिर्खा मेटिन्छ। हे इन्द्रदेव ! हामीलाई तिम्रै कृपाले यश प्राप्त हुन्छ।

अभि द्युम्नानि वनिन इन्द्रं सचन्ते अक्षिता। पीत्वी सोमस्य वावृधे ॥७॥
देवताको पूजा गर्ने यजमानले चढाएको दीप्तिमान् र अक्षय सोम आदिसहितको हवि इन्द्रदेवतिर जान्छ। यस्तो सोम पान गरेर इन्द्रदेव उर्लन्छन्।

अर्वावतो न आ गहि परावतश्च वृत्रहन्। इमा जुषस्व नो गिरः ॥८॥
हे वृत्रलाई मार्ने इन्द्रदेव ! तिमी नजिकबाट हामीकहाँ आऊ, टाढाबाट पनि हामीकहाँ आऊ। हामीले चढाएको यी स्तुति स्वीकार गर।

यदन्तरा परावतमर्वावतं च हूयसे। इन्द्रेह तत आ गहि ॥९॥
हे इन्द्रदेव ! तिमी टाढाबाट, नजिकबाट, मध्यम दूरी वा जतातत्तैबाट बोलाइन्छौ, ती जुनसुकै ठाउँमा पुगेका भए पनि हाम्रा यज्ञमा आऊ।

[सूक्त – ४१]

**ऋषि** – विश्वामित्र गाथिन। **देवता** – इन्द्र। **छन्द** – गायत्री।

आ तू न इन्द्र मद्र्यग्घुवानः सोमपीतये। हरिभ्यां याह्यद्रिवः ॥१॥
हे इन्द्रदेव ! सोमपान गर्नका लागि तिमीलाई आह्वान गर्दछौं। हामीकहाँ हरि नामका अश्वमा चढेर आऊ।

सत्तो होता न ऋत्वियस्तिस्तिरे बर्हिरानुषक्। अयुजन्प्रातरद्रयः ॥२॥
हाम्रा यज्ञमा ऋतुअनुसारले होताहरू बसेका छन्। उनीहरूले कुशका आसन ओछ्याएका छन् र सोम निचोर्नका लागि ढुङ्गाका टुक्राको व्यवस्था मिलाएका छन्। हे इन्द्रदेव ! सोमपान गर्नका लागि तिमी आऊ।

इमा ब्रह्म ब्रह्मवाहः क्रियन्त आ बर्हिः सीद। वीहि शूर पुरोडाशम् ॥३॥
हे शूरवीर इन्द्रदेव ! स्तोताहरू स्तुति सम्पादन गर्दछन्। त्यसैले तिमी यस आसनमा बस र पुरोडाश सेवन गर।

रारन्धि सवनेषु ण एषु स्तोमेषु वृत्रहन्। उक्थेष्विन्द्र गिर्वणः ॥४॥
हे वृत्रलाई मार्ने भनी स्तुति गरिएका इन्द्रदेव ! यज्ञका तीनै वटा सवनमा गाएका स्तोत्र र मन्त्रहरूमा तिमी रमाऊ।

मतयः सोमपामुरुं रिहन्ति शवसस्पतिम्। इन्द्रं वत्सं न मातरः ॥५॥
हाम्रो स्तुति सोम पान गर्ने महान् बलका अधिपति इन्द्रदेवका लागि हराएको बाछालाई माउ गाईले भेटेझैं खुसी गराउने गरी प्राप्त हुन्छ।

स मन्दस्वा ह्यन्धसो राधसे तन्वा महे। न स्तोतारं निदे करः ॥६॥
हे इन्द्रदेव ! धनको ठूलो थुप्रो दिनका लागि तिमी सोमयुक्त हविष्यान्नले आफ्नो तनमन खुसी गराऊ। हामी स्तोताहरूलाई निन्दित हुन नदेऊ।

वयमिन्द्र त्वायवो हविष्मन्तो जरामहे। उत त्वमस्मयुर्वसो ॥७॥
सबैलाई आश्रय प्रदान गर्न सक्ने हे इन्द्रदेव ! तिमीलाई भेट्ने रहरमा हामी हविसहित तिम्रो स्तुति गर्दछौं। तिमी हाम्रो रक्षा गर।

मारे अस्मद्वि मुमुचो हरिप्रियार्वाङ् याहि। इन्द्र स्वधावो मत्स्वेह ॥८॥
हरि नामका अश्वका असल स्वामी हे इन्द्रदेव ! तिमी आफ्नो घोडा हामीभन्दा टाढा गएर नखोल। हामीकहाँ आऊ, यस यज्ञमा आएर खुसी होऊ।

अर्वाञ्चं त्वा सुखे रथे वहतामिन्द्र केशिना। घृतस्नू बर्हिरासदे ॥९॥
हे इन्द्रदेव ! टल्किने र चिल्लो जगर हुने अश्वले तिमीलाई सुखदायी रथमा हामीकहाँ लिएर आऊन्। यस यज्ञस्थलमा तिमी कुशका पवित्र आसनमा सुहाउँदिलो गरी बस।

[सूक्त - ४२]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - गायत्री।

उप नः सुतमा गहि सोममिन्द्र गवाशिरम्। हरिभ्यां यस्ते अस्मयुः ॥१॥
हे इन्द्रदेव ! याजकहरूलाई भेट्ने रहरले तिमी अश्व नारेका रथमा हामीकहाँ आऊ। हामीले पेलेर गाईको दुध मिसाएको सोमरस पान गर।

तमिन्द्र मदमा गहि बर्हिःष्ठां ग्रावभिः सुतम्। कुविन्न्वस्य तृप्णवः ॥२॥
हे इन्द्रदेव ! ढुङ्गेनीमा उम्रिएका कुशका आसनमा बस्न खुसी गराउने सोमका नजिकै तिमी आऊ र अघाउने गरी पान गर।

इन्द्रमित्था गिरो ममाच्छागुरिषिता इतः। आवृते सोमपीतये ॥३॥
इन्द्रदेवलाई बोलाउन पठाइएका स्तुतिले उनलाई सोमपान गर्नका लागि यस यज्ञमा सजिलैसित ल्याओस्।

इन्द्रं सोमस्य पीतये स्तोमैरिह हवामहे। उक्थेभिः कुविदागमत् ॥४॥
सोमपान गर्नका लागि हामी यहाँका यज्ञमा इन्द्रदेवलाई स्तुति गान गर्दै बोलाउँछौं। स्तोत्रले बोलाउँदा उनी कैयौं पटक अनेकौं यज्ञमा आएका छन्।

इन्द्र सोमाः सुता इमे तान्दधिष्व शतक्रतो। जठरे वाजिनीवसो ॥५॥
हे सय यज्ञ गर्ने इन्द्रदेव ! तिम्रा लागि सोम तयार छ। यसले तिमी आफ्नो पेट भर। तिमी धनका मालिक हौ।

विद्मा हि त्वा धनञ्जयं वाजेषु दधृषं कवे। अधा ते सुम्नमीमहे ॥६॥
हे अनौठो ज्ञान भएका इन्द्रदेव ! तिमीलाई हामी शत्रु जित्ने र धन विजय गर्नेका रूपमा चिन्दछौं। त्यसैले तिमीसित हामी धन माग्दछौं।

इममिन्द्र गवाशिरं यवाशिरं च नः पिब। आगत्या वृषभिः सुतम् ॥७॥

हे इन्द्रदेव ! तिमी आफ्ना बलिया अश्वमा आएर हामीले पेलेर तयार पारेपछि गाईको दुध मिसाएको सोमरस पान गर।

तुभ्येदिन्द्र स्व ओक्ये३ सोमं चोदामि पीतये। एष रारन्तु ते हृदि ॥८॥

हे इन्द्रदेव ! हामी यस यज्ञस्थलमा तिम्रा लागि सोमरस प्रस्तुत गर्दछौं। यस सोमरसले तिम्रा मनमा खुसी गराओस्।

त्वां सुतस्य पीतये प्रत्नमिन्द्र हवामहे। कुशिकासो अवस्यवः ॥९॥

हे पहिलेदेखि चिनिएका इन्द्रदेव ! हामी कुशिक वंशजहरू तिम्रो संरक्षण गर्ने सामर्थ्यको आशा गर्दछौं। सोमपानका लागि यज्ञस्थलमा हामी तिम्रो स्वागत गर्दछौं।

[सूक्त - ४३]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

आ याह्यर्वाङुप वन्धुरेष्ठास्तवेदनु प्रदिवः सोमपेयम्।
प्रिया सखाया वि मुचोप बर्हिस्त्वामिमे हव्यवाहो हवन्ते ॥१॥

हे इन्द्रदेव ! रथमा बसेर हामीकहाँ तिमी आऊ। सफा, उज्यालो सोमरस पान गर्नका लागि तिमी आफ्नो प्रिय अश्व यज्ञस्थलका नजिकै खोल। ऋत्विकहरू तिमीलाई स्वागत गर्नेछन्।

आ याहि पूर्वीरति चर्षणीराँ अर्य आशिष उप नो हरिभ्याम्।
इमा हि त्वा मतयः स्तोमतष्टा इन्द्र हवन्ते सख्यं जुषाणाः ॥२॥

हे अधिकारसम्पन्न इन्द्रदेव ! तिमी अनेकौं प्रजालाई छोडेर भए पनि हामीकहाँ आऊ। तिमी अश्वमा हामीकहाँ आऊ भन्ने हाम्रो अनुरोध छ। तिम्रो मित्रताको रहर गरेर स्तोताहरू स्तुतिद्वारा तिमीलाई स्वागत गरिरहेका छन्।

आ नो यज्ञं नमोवृधं सजोषा इन्द्र देव हरिभिर्याहि तूयम्।
अहं हि त्वा मतिभिर्जोहवीमि घृतप्रयाः सधमादे मधूनाम् ॥३॥

हे उज्याला इन्द्रदेव ! खुसी मनले घोडामा चढी हाम्रो अन्न कमाउने यज्ञमा आऊ। सोमयज्ञमा घिउसहितका सोम हव्यका रूपमा चढाउँदै तिमीलाई स्वागत गर्दछौं।

आ च त्वामेता वृषणा वहातो हरी सखाया सुधुरा स्वङ्गा।
धानावदिन्द्रः सवनं जुषाणः सखा सख्युः शृणवद्वन्दनानि ॥४॥

हे इन्द्रदेव ! दह्रो र राम्रो जुवामा नारेका, बलियो जिउ भएका र मित्रसरिका तिम्रा अश्वले तिमीलाई हामीकहाँ ल्याऊन्। हविष्यान्नरूपी सोमरस पान गर्दै तिमी मैत्रीभावले पूर्ण भएर स्तोताहरूको स्तुति सुन।

कुविन्मा गोपां करसे जनस्य कुविद्राजानं मघवन्नृजीषिन्।
कुविन्म ऋषिं पपिवांसं सुतस्य कुविन्मे वस्वो अमृतस्य शिक्षा ॥५॥

सोमरस अति रुचाएर खोज्ने, ऐश्वर्यशाली हे इन्द्रदेव ! हामीलाई दुनियाँको रक्षक, प्रजाको अधिकारी, दूरद्रष्टा ऋषि र पेलेर तयार पारेको सोमरस पान गर्ने बनाऊ र कहिल्यै ननासिने धन प्रदान गर।

आ त्वा बृहन्तो हरयो युजाना अर्वागिन्द्र सधमादो वहन्तु।
प्र ये द्विता दिव ऋञ्जन्त्याताः सुसम्मृष्टासो वृषभस्य मूराः ॥६॥

हे इन्द्रदेव ! रथमा नारेका हरि नामका अश्वले तिमीलाई हामीतिर ल्याओस्। हे खोजेको कुरो पूरा गरिदिने देवताहरू हो ! इन्द्रदेवका शत्रु सखाप पार्ने अश्व दुवैतिर प्रभाव पार्दै द्युलोकबाट आउँछ।

इन्द्र पिब वृषधूतस्य वृष्ण आ यं ते श्येन उशते जभार।
यस्य मदे च्यावयसि प्र कृष्टीर्यस्य मदे अप गोत्रा ववर्थ ॥७॥

हे इन्द्रदेव ! तिमी सोमरस अति रुचाउँछौ। बाज पक्षीले तिम्रा लागि सोमरस ल्याएको छ। ढुङ्गाले पेलेर रहर लाग्दो गरी तयार गरेको सोमरस तिमी पान गर। यसबाट खुसी प्राप्त गर्दै शत्रुलाई पर पुर्‍याउँछौ।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥८॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकहरूले गरेका स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौं।

[सूक्त - ४४]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - बृहती।

अयं ते अस्तु हर्यतः सोम आ हरिभिः सुतः।
जुषाण इन्द्र हरिभिर्न आ गह्या तिष्ठ हरितं रथम् ॥१॥

हे इन्द्रदेव ! ढुङ्गाले पेलेर निकालेको आनन्द दिने र स्वादिलो सोमरस तिम्रै लागि हो। तिमी हरि नामका अश्वले तानेका रथमा बसेर हाम्रा यज्ञमा आऊ।

हर्यन्नुषसमर्चयः सूर्यं हर्यन्नरोचयः।
विद्वांश्चिकित्वान्हर्यश्व वर्धस इन्द्र विश्वा अभि श्रियः ॥२॥

हरि नामका अश्वका धनी हे इन्द्रदेव ! तिमी सोमको कामना गर्दै उषा र सूर्य प्रकाशित गराउँछौ। तिमी विद्वान् छौ र हाम्रो रहर बुझेर समृद्धि र वैभव बढाइदेऊ।

द्यामिन्द्रो हरिधायसं पृथिवीं हरिवर्पसम्।
अधारयद्धरितोर्भूरि भोजनं ययोरन्तर्हरिश्चरत् ॥३॥

बीचबाट सूर्यदेवको हरियो किरण छिर्ने द्युलोक र रश्मि धारण गरेका हुनाले हरियोपना फैलिएको र गतिलो भोजन सामग्रीले युक्त भएको पृथ्वी इन्द्रदेवले धारण गरे।

जज्ञानो हरितो वृषा विश्वमा भाति रोचनम्।
हर्यश्वो हरितं धत्त आयुधमा वज्रं बाह्वोर्हरिम् ॥४॥

चाहिएको कुरो दिन सक्ने इन्द्रदेव उत्पन्न भएर सम्पूर्ण लोकलाई नै उज्यालो पार्दछन्। हरियो वर्णका अश्व भएका इन्द्रदेवले हातमा चम्किलो वज्र आदि हतियार लिन्छन्।

इन्द्रो हर्यन्तमर्जुनं वज्रं शुक्रैरभीवृतम्।
अपावृणोद्धरिभिरद्रिभिः सुतमुद्गा हरिभिराजत ॥५॥

इन्द्रदेवले रहरअनुसारको, तेजले परिपूर्ण, प्रकाशसम्पन्न र ढुङ्गाले पेलेर तयारी सोमरस फेला पारे। इन्द्रदेवले वज्र लिएर अश्वमा यात्रा गर्दै लुटिएका गाई मुक्त गराए।

[सूक्त - ४५]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - बृहती।

आ मन्द्रैरिन्द्र हरिभिर्याहि मयूररोमभिः।
मा त्वा के चिन्नि यमन्विं न पाशिनोऽति धन्वेव ताँ इहि ॥१॥

यात्रीले मरुस्थल पार गरेझैं हे इन्द्रदेव ! मयुरले आनन्ददायी पँखेटा फिंजाएको जस्तो जगर भएका घोडामा मार्गको बाधा हटाउँदै तिमी आऊ। बाटामा जाल फिंजाउनेहरूले तिमीलाई बाधा हाल्न नसकून्।

वृत्रखादो वलंरुजः पुरां दर्मो अपामजः।
स्थाता रथस्य हर्योरभिस्वर इन्द्रो दृळ्हा चिदारुजः ॥२॥

वृत्रासुर मार्ने, राक्षसको बल सिध्याउने, सहर ध्वस्त पार्ने, जल बर्साउने र घोडामा सजिएका इन्द्रदेव शत्रुलाई जित्न सक्छन्।

गम्भीराँ उदधींरिव क्रतुं पुष्यसि गाइव।
प्र सुगोपा यवसं धेनवो यथा ह्रदं कुल्या इवाशत ॥३॥

हे इन्द्रदेव ! गहिरो समुद्रलाई जलका धाराले भरिपूर्ण पारेझैं तिमी याज्ञिकहरूलाई चाहिएको फल दिएर पुष्ट गराउँछौ। असल गोठालाले राम्रो दाना खुवाएर गाई पोसेझैं र नदीहरू समुद्रमा मिसिएर पोसेझैं सोमका धाराले तिमीलाई पोस्दछन्।

आ नस्तुजं रयिं भरांश न प्रतिजानते।
वृक्षं पक्वं फलमङ्कीव धूनुहीन्द्र सम्पारणं वसु ॥४॥

हे इन्द्रदेव ! पिताले आफ्ना ज्ञानीगुनी छोरालाई धनको अंश दिएझैं तिमी पनि शत्रुलाई पराजित गर्न सक्ने खालको ऐश्वर्य हामीलाई प्रदान गर। मानिसले अङ्कुसे लगाएका टाँगाले हल्लाएर पाकेका फल झारेझैं हामीले खोजेको धन देऊ।

स्वयुरिन्द्र स्वराडसि स्मद्दिष्टिः स्वयशस्तरः।
स वावृधान ओजसा पुरुष्टुत भवा नः सुश्रवस्तमः ॥५॥

हे इन्द्रदेव ! तिमी धनी छौ। तिमी स्वर्गको जस्तै तेजले सम्पन्न छौ। सबैको नेतृत्व गर्ने र मनग्गे ख्याति कमाएका छौ। हे धेरै जनाले स्तुति गरिएका इन्द्रदेव ! बलकै कारण विकसित भएर तिमी हाम्रा लागि अन्न र धनको थुप्रो देऊ।

[सूक्त - ४६]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

युध्मस्य ते वृषभस्य स्वराज उग्रस्य यूनः स्थविरस्य घृष्वेः।
अजूर्यतो वज्रिणो वीर्याइणीन्द्र श्रुतस्य महतो महानि ॥१॥

हे इन्द्रदेव ! तिमी सिपालु योद्धा, खोजेको पुऱ्याउने, धनका अधिपति, शूरवीर, तरुण, स्थायी प्रतिष्ठासम्पन्न, शत्रुलाई पराजित गराउने, वज्र लिएका र तीनै लोकमा प्रख्यात छौ। वीरले गर्नेजस्ता तिम्रा कार्यहरू महान् छन्।

महाँ असि महिष वृष्ण्येभिर्धनस्पृदुग्र सहमानो अन्यान्।
एको विश्वस्य भुवनस्य राजा स योधया च क्षयया च जनान् ॥२॥

हे महान् र उग्र इन्द्रदेव ! तिमी धनले पुरिएर बस्ने, आफ्ना पराक्रमले शत्रु जित्ने र सम्पूर्ण संसारको अधिकारले सम्पन्न छौ। तिमी शत्रुलाई विनाश गर र सत्यको नियम पालन गर्नेहरूलाई आश्रय देऊ।

प्र मात्राभी रिरिचे रोचमानः प्र देवेभिर्विश्वतो अप्रतीतः।
प्र मज्मना दिव इन्द्रः पृथिव्याः प्रोरोर्महो अन्तरिक्षादृजीषी ॥३॥

दीप्तिमान्, कुनै पनि कारणले पराजित नहुने र सोमरस पान गर्ने इन्द्रदेव सबै सीमित पदार्थभन्दा महान् छन्। देवताको सम्पूर्ण बलभन्दा बलिया छन्। द्यावापृथिवीभन्दा बढी विशाल छन् र व्यापक अन्तरिक्षभन्दा पनि उत्कृष्ट छन्।

उरुं गभीरं जनुषाभ्युग्रं विश्वव्यचसमवतं मतीनाम्।
इन्द्रं सोमासः प्रदिवि सुतासः समुद्रं न स्रवत आ विशन्ति ॥४॥

हे इन्द्रदेव ! तिमी महान् र गम्भीर छौ, जन्मदेखि नै अत्यन्त वीर र विश्वमा व्याप्त रहने खालका छौ। तिमी स्तोताहरूका रक्षक हौ। प्रकृष्ट, दीप्तिमान् पेलेर तयार पारिएको सोमरसले तिमीलाई टाढासम्म यात्रा गरेर नदीले समुद्रलाई झैं फेला पर्दछ।

यं सोममिन्द्र पृथिवीद्यावा गर्भं न माता बिभृतस्त्वाया।
तं ते हिन्वन्ति तमु ते मृजन्त्यध्वर्यवो वृषभ पातवा उ ॥५॥

हे इन्द्रदेव ! आमाले गर्भमा सन्तान धारण गरेझैं सोमभित्र द्यावापृथिवीले तिम्रो रहर धारण गर्दछन्। हे इष्ट पूरा गराउने इन्द्रदेव ! अध्वर्युहरू त्यही सोम शुद्ध गरेर तिमीलाई पिउनका लागि प्रेरित गर्दछन्।

[सूक्त - ४७]

ऋषि - विश्वामित्र गाथिन्। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

मरुत्वाँ इन्द्र वृषभो रणाय पिबा सोममनुष्वधं मदाय।
आ सिञ्चस्व जठरे मध्व ऊर्मिं त्वं राजासि प्रदिवः सुतानाम् ॥१॥

हे इन्द्रदेव ! मरुत्‌हरूका सहयोगले तिमी वर्षा गर्दछौ। हव्य आदिले युक्त सोम पान गरेर खुसीले रमाउँदै तिमी युद्धका लागि तयार होऊ। द्युलोकमा रहेको दिव्य सोमका तिमी अधिपति हौ।

सजोषा इन्द्र सगणो मरुद्भिः सोमं पिब वृत्रहा शूर विद्वान्।
जहि शत्रूँरप मृधो नुदस्वाथाभयं कृणुहि विश्वतो नः ॥२॥

मरुत्‌हरूका सहयोगले वृत्र संहार गर्ने, देवताका मित्र, वीर, पराक्रमी हे इन्द्रदेव ! याजकले चढाएको सोमरस पिएर हिंसक प्राणी र शत्रु विनाश गर्दै हाम्रो डर मेटाऊ।

उत ऋतुभिर्ऋतुपाः पाहि सोममिन्द्र देवेभिः सखिभिः सुतं नः।
याँ आभजो मरुतो ये त्वान्वहन्वृत्रमदधुस्तुभ्यमोजः ॥३॥

हे ऋतुहरूका पालक इन्द्रदेव ! मित्रका रूपमा रहेका देवताहरू र मरुत्‌लाई साथमा लिएर हामीले चढाएको सोमरस पान गर। जुन मरुत्‌हरूले तिम्रो सहायता गरे र जसले तिम्रो अनुसरण गरे, उनैले युद्धमा तिम्रो शक्ति बढाइदिए। त्यसपछि तिमीले वृत्रलाई वध गर्‍यौ।

ये त्वाहिहत्ये मघवन्नवर्धन्ये शाम्बरे हरिवो ये गविष्टौ।
ये त्वा नूनमनुमदन्ति विप्राः पिबेन्द्र सोमं सगणो मरुद्भिः ॥४॥

हरि नामका अश्वका अधिपति र ऐश्वर्यले सम्पन्न हे इन्द्रदेव ! जसले अहि नामका असुरलाई मार्न, शम्बासुरलाई वध गर्नका लागि तिमीलाई अगाडि सारे, जुन मेधावी मरुत्‌हरूले गाई प्राप्त गर्नका लागि युद्धमा तिमीलाई खुसी तुल्याए, ती सबैका साथमा तिमी सोमपान गर।

मरुत्वन्तं वृषभं वावृधानमकवारिं दिव्यं शासमिन्द्रम्।
विश्वासाहमवसे नूतनायोग्रं सहोदामिह तं हुवेम ॥५॥

मरुत्‌हरूको सहायताले अत्यन्त महत्त्वपूर्ण कार्य गर्ने, दिव्य गुणले सम्पन्न, असल शासक, वीर, पराक्रमी र शत्रु विनाश गर्ने इन्द्रदेवलाई हामी आह्वान गर्दछौँ। उनले हामीलाई सबै किसिमले संरक्षण प्रदान गरून्।

## [सूक्त - ४८]

ऋषि – विश्वामित्र गाथिन। देवता – इन्द्र। छन्द – त्रिष्टुप्।

सद्यो ह जातो वृषभः कनीनः प्रभर्तुमावदन्धसः सुतस्य।
साधोः पिब प्रतिकामं यथा ते रसाशिरः प्रथमं सोम्यस्य ॥१॥

इन्द्रदेव जन्मना साथ जलको वर्षा गराउने र सुन्दर थिए। उनले हविष्यान्नयुक्त सोम प्रदान गर्नेहरूलाई रक्षा गरे। हे देवताहरू हो ! सोमपानको आशा गर्दाखेरि तिमीहरू पहिले दुध मिसिएको सोमरस पान गर्दछौ।

यज्जायथास्तदहरस्य कामेऽंशोः पीयूषमपिबो गिरिष्ठाम्।
तं ते माता परि योषा जनित्री महः पितुर्दम आसिञ्चदग्रे ॥२॥

हे इन्द्रदेव ! तिमी उत्पन्न भएका दिन तिर्खाएपछि पर्वतमा रहेका सोमलताको रस पान गरेका थियौ। तिम्री कम उमेरकी आमा अदितिले महान् पिताका घरमा स्तनपान गराउनुभन्दा पहिले तिम्रा मुखमा यसै सोमरसले सेचन गरेकी थिइन्।

उपस्थाय मातरमन्नमैट्ट तिग्ममपश्यदभि सोममूधः।
प्रयावयन्नचरद् गृत्सो अन्यान्महानि चक्रे पुरुधप्रतीकः ॥३॥

इन्द्रदेवले आमाका काखमा पसेर पोषक आहारा खोजी गरे। त्यस बेला उनले आमाका स्तनमा उज्यालो दुधरूपी सोम देखे। हुर्कँदै बढ्दै उनले विभिन्न शत्रुलाई उनका स्थानबाट हटाउन लागे। त्यसपछि विभिन्न रूप धारण गरेर इन्द्रदेवले महान् पराक्रम प्रदर्शन गरे।

उग्रस्तुराषाडभिभूत्योजा यथावशं तन्वं चक्र एषः।
त्वष्टारमिन्द्रो जनुषाभिभूयामुष्या सोममपिबच्चमूषु ॥४॥

शत्रुका लागि यी इन्द्रदेव उग्ररूप, तुरुन्तै जितिहाल्ने र विभिन्न बलले युक्त छन्। उनले इच्छाअनुसारको शरीर बनाए। उनले आफ्नै सामर्थ्यले त्वष्टा नामका असुरलाई जिते र भाँडामा राखेको सोमरस चुपचाप पिइदिए।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥५॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकले गरेको स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौँ।

[सूक्त - ४९]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

शंसा महामिन्द्रं यस्मिन्विश्वा आ कृष्टयः सोमपाः काममव्यन्।
यं सुक्रतुं धिषणे विभ्वतष्टं घनं वृत्राणां जनयन्त देवाः ॥१॥

हे स्तोताहरू हो ! जनताहरू सोमपान गर्ने इन्द्रदेवबाट इच्छा पूरा हुन्छ भन्ने आशा गर्दछन्। समस्त देवताहरू र द्यावापृथिवी पनि जुन उत्तम कार्य गर्ने, रूपवान् र वृत्रको विनाश गर्ने इन्द्रदेवलाई प्रसन्न गराउँछन्। तिमीहरू उनै महान् इन्द्रदेवको स्तुति गर।

यं नु नकिः पृतनासु स्वराजं द्विता तरति नृतमं हरिष्ठाम्।
इनतमः सत्वभिर्यो ह शूषैः पृथुज्रया अमिनादायुर्दस्योः ॥२॥

युद्धमा आफ्ना तेजले दीप्तिमान्, मानिसको नेतृत्व गर्ने, हरि नामका अश्व नारेका रथमा बसेका इन्द्रदेवलाई कसैले पनि छल गरेर जित्न सक्दैन। इन्द्रदेव सिपालु सेनानायक हुन्। उनले आफ्ना सत्यरूपी सामर्थ्यले शत्रुलाई चोक्टाचोक्टा पारिदिन्छन्।

सहावा पृत्सु तरणिर्नार्वा व्यानशी रोदसी मेहनावान्।
भगो न कारे हव्यो मतीनां पितेव चारुः सुहवो वयोधाः ॥३॥

युद्धको घोडाजस्तै भएर इन्द्रदेव शत्रुमाथि आक्रमण गर्दछन्। उनी आफ्ना सामर्थ्यले द्यावा र पृथिवीमा व्याप्त रहेका भगदेवजस्तै अत्यन्त ऐश्वर्यवान् छन्। उनी अन्नका धनी हुनाले आह्वान गर्न योग्य छन्। स्तुतिकर्ताहरूका उनी पालनकर्ता पिताजस्तै छन्।

धर्ता दिवो रजसस्पृष्ट ऊर्ध्वो रथो न वायुर्वसुभिर्नियुत्वान्।
क्षपां वस्ता जनिता सूर्यस्य विभक्ता भागं धिषणेव वाजम् ॥४॥

इन्द्रदेव द्युलोक र अन्तरिक्षका धारक हुन्। उनी रथभैँ उकालोतर्फको यात्रा गर्दछन्। उनी धन र अश्वले युक्त भएपछि रात मेटाएर सूर्य प्रकट गराउँछन्। उनी याजकको स्तुति र कर्मका फलअनुसारले अन्नको विभाजन गर्दछन्।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥५॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकहरूले गरेको स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौँ।

[सूक्त - ५०]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

इन्द्रः स्वाहा पिबतु यस्य सोम आगत्या तुम्रो वृषभो मरुत्वान्।
ओरुव्यचाः पृणतामेभिरन्नैरास्य हविस्तन्वः१ काममृध्याः ॥१॥

यो सोम इन्द्रदेवका लागि हो। यज्ञमा आहुतिका रूपमा उचित किसिमले दिएको सोम उनले पान गरून्। उनी शत्रु नाश गरेर मरुत्‌हरूसँगै जल वर्षा गराउँछन्। अत्यन्त व्यापक यशसम्पन्न इन्द्रदेव यज्ञमा आएर हविरूपी अन्नले सन्तुष्ट हुँदै शरीर पोसून्।

आ ते सपर्यू जवसे युनज्मि ययोरनु प्रदिवः श्रुष्टिमावः।
इह त्वा धेयुर्हरयः सुशिप्र पिबा त्व१स्य सुषुतस्य चारोः ॥२॥

हे इन्द्रदेव ! यस यज्ञमा चाँडै आउनका लागि राम्रो सेवा दिन सक्ने अश्व रथमा बाँध। अनि हाम्रो संरक्षणका लागि आऊ। अश्वले तिमीलाई हाम्रा यज्ञमा ल्याओस्। राम्रो टोपी लगाउने हे इन्द्रदेव ! तिमी गतिलो गरी पेलेर तयार पारिएको सोमरस पान गर।

गोभिर्मिमिक्षुं दधिरे सुपारमिन्द्रं ज्यैष्ठ्याय धायसे गृणानाः।
मन्दानः सोमं पपिवाँ ऋजीषिन्त्समस्मभ्यं पुरुधा गा इषण्य ॥३॥

सबै खालका रहर पूरा गराउने र दुःख मेटाइदिने इन्द्रदेवका लागि गाईको दुध आदि मिसाएर स्तोताहरू सोमरस समर्पित गर्दछन्। तिनले हामीलाई बल प्रदान गरून्। हे सोमरस पिउने इन्द्रदेव ! खुसीले रमाउँदै सोमरस पान गरेर हाम्रा लागि विभिन्न खालका गाईलाई प्रेरित गर।

इमं कामं मन्दया गोभिरश्वैश्चन्द्रवता राधसा पप्रथश्च।
स्वर्यवो मतिभिस्तुभ्यं विप्रा इन्द्राय वाहः कुशिकासो अक्रन् ॥४॥

हे इन्द्रदेव ! गाई, अश्व र अन्य ऐश्वर्यसम्बन्धी धन प्रदान गरेर तिमी हाम्रो कामना पूरा गर र प्रसिद्धि प्रदान गर। स्वर्गको जस्तै सुखका रहर गर्ने मेधावी कुशिक वंशीहरूले विचारपूर्वक तिम्रा लागि स्तोत्र रचना गरेका छन्।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥५॥

धनधान्यले सम्पन्न, वैभवशाली, युद्धमा उत्साहपूर्वक विजय प्राप्त गर्ने, भयङ्कर शत्रुको सेना विनाश गर्ने, याजकहरूले गरेका स्तुतिगान सुनिदिने हे इन्द्रदेव ! हामी आश्रयको कामना गर्दै तिमीलाई आह्वान गर्दछौं।

## [सूक्त - ५१]

ऋषि - विश्वामित्र गाथिन। देवता - इन्द्र। छन्द - त्रिष्टुप् जगती गायत्री।

चर्षणीधृतं मघवानमुक्थ्य१मिन्द्रं गिरो बृहतीरभ्यनूषत।
वावृधानं पुरुहूतं सुवृक्तिभिरमर्त्यं जरमाणं दिवेदिवे ॥१॥

सबै मानिसलाई पालनपोषण गर्ने, ऐश्वर्यशाली, ख्यातियुक्त, निरन्तर उन्नति गर्ने, अमर र अनेकौं स्तोत्रले प्रत्येक दिन प्रशंसा गरिने इन्द्रदेवलाई हामी अनेकौं स्तुति गर्दछौं।

शतक्रतुमर्णवं शाकिनं नरं गिरो म इन्द्रमुप यन्ति विश्वतः।
वाजसनिं पूर्भिदं तूर्णिमप्तुरं धामसाचमभिषाचं स्वर्विदम् ॥२॥

इन्द्रदेव सयौं यज्ञ सम्पन्न गर्ने, जलका धनी, सामर्थ्यशील मरुत्हरूलाई नियन्त्रण गर्ने, अन्न प्रदान गर्ने, शत्रुको सहर भत्काउने, चाँडो गति भएका, जल प्रेरित गर्ने, तेजसम्पन्न शत्रु पराजित गर्ने र स्वर्गजस्तै सुखदाता हुन्। तिनले सबै तिरबाट स्तुति प्राप्त गर्छन्।

आकरे वसोर्जरिता पनस्यतेऽनेहसः स्तुभ इन्द्रो दुवस्यति।
विवस्वतः सदन आ हि पिप्रिये सत्रासाहमभिमातिहनं स्तुहि ॥३॥

धन उपलब्ध गर्ने युद्धमा स्तोताहरू इन्द्रदेवको प्रशंसा गर्छन्। इन्द्रदेव निष्पाप स्तुति स्वीकार गर्दछन्। उनी यज्ञ आदि कर्म गर्नेहरूका घरमा सोमयुक्त हव्य आदि सेवन गरेर अत्यन्त प्रसन्न हुन्छन्। हे स्तोताहरू हो ! तिमी मरुत्हरूसँगै शत्रु पराजित गर्ने र अभिमानीलाई संहार गर्ने इन्द्रदेवको स्तुति गर।

नृणामु त्वा नृतमं गीर्भिरुक्थैरभि प्र वीरमर्चता सबाधः।
सं सहसे पुरुमायो जिहीते नमो अस्य प्रदिव एक ईशे ॥४॥

हे मानिसका नियन्त्रक र वीर इन्द्रदेव ! असुरले सताएका ऋत्विक्हरू स्तुति र मन्त्रले तिम्रो अर्चना गर्दछन्। विभिन्न पराक्रमले सम्पन्न तिमी बलका लागि युद्धमा जान्छौ। आकाशीय सोमका स्वामी तिमी नै हौ। तिमीलाई नमस्कार छ।

पूर्वीरस्य निष्षिधो मर्त्येषु पुरू वसूनि पृथिवी बिभर्ति।
इन्द्राय द्याव ओषधीरुतापो रयिं रक्षन्ति जीरयो वनानि ॥५॥

अनेक मानिसलाई इन्द्रदेवको कृपा प्राप्त हुन्छ। सबैलाई नियमित गराउने इन्द्रदेवका लागि पृथ्वीले विभिन्न धन धारण गर्दछ। इन्द्रदेवकै आदेशले सूर्यदेवले सम्पूर्ण औषधि, जल, मानिस र वनको रक्षा गर्दछन्।

तुभ्यं ब्रह्माणि गिर इन्द्र तुभ्यं सत्रा दधिरे हरिवो जुषस्व।
बोध्या३पिरवसो नूतनस्य सखे वसो जरितृभ्यो वयो धाः ॥६॥

हरि नामका अश्वका स्वामी हे इन्द्रदेव ! सम्पूर्ण स्तोता ऋत्विक्हरू तिम्रै लागि मन्त्र र स्तोत्र तयार

गर्दछन्। हे मित्रका रूपमा सबैसित निवास गर्ने इन्द्रदेव ! संरक्षण प्राप्तिका लागि यो नयाँ हवि तिमीलाई प्रदान गर्दछौं। यसलाई चिनेर स्तोतालाई अन्न प्रदान गर।

**इन्द्र मरुत्व इह पाहि सोमं यथा शार्याते अपिबः सुतस्य।**
**तव प्रणीती तव शूर शर्मन्ना विवासन्ति कवयः सुयज्ञाः ॥७॥**

हे इन्द्रदेव ! मरुत्हरूसँग तिमीले जसरी शर्यातका पुत्र शार्यातका यज्ञमा गएर सोमरस पान गरेका थियौ, उसै गरी यस यज्ञमा उपस्थित भएर सोमरस पान गर। हे वीर ! यज्ञस्थलमा याजकहरू हविष्यान्न समर्पित गर्दै तिम्रो सेवा गर्दछन्।

**स वावशान इह पाहि सोमं मरुद्भिरिन्द्र सखिभिः सुतं नः।**
**जातं यत्त्वा परि देवा अभूषन्महे भराय पुरुहूत विश्वे ॥८॥**

हे इन्द्रदेव ! सोमको कामना गर्दै तिमी मित्ररूपी मरुत्हरूसँग हाम्रा यस यज्ञमा पेलेर तयार गरेको सोमरस पान गर। अनेकौंले बोलाउने गरेका हे इन्द्रदेव ! तिमी उत्पन्न हुनासाथ देवताहरूले तिमीलाई महासङ्ग्रामका लागि खट्याएका थिए।

**अप्तूर्ये मरुत आपिरेषोऽमन्दन्निन्द्रमनु दातिवाराः।**
**तेभिः साकं पिबतु वृत्रखादः सुतं सोमं दाशुषः स्वे सधस्थे ॥९॥**

युद्धक्षेत्रमा जल वर्षा गराउने मरुत्हरू आफ्ना स्वामी इन्द्रदेवलाई खुसी पार्दछन्। वृत्रलाई विनाश गर्ने इन्द्रदेवले मरुत्हरूसँगै हविदाता यजमानका घरमा पेलेर तयार पारेको सोमरस पान गरे।

**इदं ह्यन्वोजसा सुतं राधानां पते। पिबा त्वऽस्य गिर्वणः ॥१०॥**

हे ऐश्वर्यका धनी र स्तुति योग्य इन्द्रदेव ! बलले निकालेको सोमरस रुचाएर पान गर।

**यस्ते अनु स्वधामसत्सुते नि यच्छ तन्वम्। स त्वा ममत्तु सोम्यम् ॥११॥**

हे सोमपान गर्ने इन्द्रदेव ! तिम्रा शरीरका लागि सोम अत्यन्तै उपयुक्त छ। यज्ञमा उपस्थित भएर तिमी यो पान गरेर खुसी होऊ।

**प्र ते अश्नोतु कुक्ष्योः प्रेन्द्र ब्रह्मणा शिरः प्र बाहू शूर राधसे ॥१२॥**

हे इन्द्रदेव ! तिम्रा पेटभित्र दुवै कोखामा यो राम्रोसित रमाओस्। स्तुतिका प्रभावले तिम्रा सबै शरीरमा सञ्चारित होस्। हे वीर इन्द्रदेव ! ऐश्वर्य प्रदान गर्नका लागि तिम्रा भुजाहरू समर्थ होऊन्।

## [सूक्त - ५२]

**ऋषि** - विश्वामित्र गाथिन। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप् गायत्री जगती।

**धानावन्तं करम्भिणमपूपवन्तमुक्थिनम्। इन्द्र प्रातर्जुषस्व नः ॥१॥**

हे इन्द्रदेव ! दही र पिठो मिसाएर पकाएको पुरोडाशको हवि हामी मन्त्रोच्चारण गर्दै समर्पित गर्दछौं। तिमी बिहानै यो स्वीकार गर।

**पुरोडाशं पचत्यं जुषस्वेन्द्रा गुरस्व च। तुभ्यं हव्यानि सिस्रते ॥२॥**

हे इन्द्रदेव ! राम्ररी पकाएको यो पुरोडाश खाऊ। यो खानका लागि पुरुषार्थ गर। यो हव्यरूपी पुरोडाश तिम्रै लागि समर्पित छ।

**पुरोडाशं च नो घसो जोषयासे गिरश्च नः। वधूयुरिव योषणाम् ॥३॥**

हे इन्द्रदेव ! हामीले दिएको पुरोडाश खाऊ। पुरुषले पत्नी सह्यारेझैं हाम्रो स्तुति तिमी स्वीकार गर।

**पुरोडाशं सनश्रुत प्रातः सावे जुषस्व नः। इन्द्र क्रतुर्हि ते बृहन् ॥४॥**

हे प्रसिद्ध इन्द्रदेव ! बिहानको सवनमा हामीले दिएको पुरोडाश खाऊ, त्यसबाट तिम्रो कर्म महान् होस्।

**माध्यन्दिनस्य सवनस्य धानाः पुरोडाशमिन्द्र कृष्वेह चारुम्।**
**प्र यत्स्तोता जरिता तूर्ण्यर्थो वृषायमाण उप गीर्भिरीट्टे ॥५॥**

हे इन्द्रदेव ! दिउँसोका सवनमा हामीले जौ आदि खाद्यान्न भुटेर आफैं तयार पारीकन दिएको पुरोडाश खाऊ। हे मेधावी इन्द्रदेव ! तिमी ऋभुहरूका साथ धनधान्यले सम्पन्न छौ। हामी स्तुति गर्दै तिम्रा लागि हविष्यान्न चढाउँछौं।

तृतीये धानाः सवने पुरुष्टुत पुरोडाशमाहुतं मामहस्व नः।
ऋभुमन्तं वाजवन्तं त्वा कवे प्रयस्वन्त उप शिक्षेम धीतिभिः ॥६॥

हे इन्द्रदेव ! धेरैले तिम्रो स्तुति गरिसके। तिमी तेस्रो सवनमा हामीले भुटेका जौं आदिले बनाएको पुरोडाश खाऊ। तिमी ऋभुहरूका साथै धनधान्य एवं पुत्रहरूले युक्त छौ। हविले युक्त स्तोत्रले हामी तिम्रो पूजा गर्दछौं।

पूषण्वते ते चकृमा करम्भं हरिवते हर्यश्वाय धानाः।
अपूपमद्धि सगणो मरुद्भिः सोमं पिब वृत्रहा शूर विद्वान् ॥७॥

हे इन्द्रदेव ! तिमी पोषण दिने, दुःखकष्ट मेटाउने र हरि नामका अश्वमा चढ्ने हौ। तिम्रा लागि हामीले दहीमा मुछेका जौका पिठाको खाने कुरो बनाएका छौं। हे वृत्रहन्ता ! मरुत्‌हरूसँग तिमी त्यो पुरोडाश खाएर सोमरस पान गर।

प्रति धाना भरत तूयमस्मै पुरोडाशं वीरतमाय नृणाम्।
दिवेदिवे सदृशीरिन्द्र तुभ्यं वर्धन्तु त्वा सोमपेयाय धृष्णो ॥८॥

हे ऋत्विक्‌हरू हो ! इन्द्रदेवका लागि चाँडै नै भुटेका जौं आदिका लावा र पुरोडाश धेरै मात्रामा देओ। किनभने उनी मानिसहरूको नेतृत्व गर्नेहरूमध्ये सबैभन्दा वीर हुन्। हे शत्रुलाई पराजित गराउने इन्द्रदेव ! हामी सबै एकत्र भएर तिम्रा लागि प्रत्येक दिन स्तुति गर्दछौं, स्तुतिले तिमीलाई सोमपानका लागि प्रेरित गरोस्।

## [सूक्त – ५३]

ऋषि – विश्वामित्र गाथिन। देवता – इन्द्र पर्वत। छन्द – त्रिष्टुप् जगती गायत्री बृहती।

इन्द्रापर्वता बृहता रथेन वामीरिष आ वहतं सुवीराः।
वीतं हव्यान्यध्वरेषु देवा वर्धेथां गीर्भिरिडया मदन्ता ॥१॥

हे इन्द्र र पर्वतदेव ! स्तुति गर्न योग्य, असल सन्तानले युक्त यजमानद्वारा समर्पित हविष्यान्नले खुसीको अनुभव गर्ने र यज्ञमा हवि खाने तिमीहरू हामीलाई अन्न प्रदान गर र हाम्रा स्तोत्रबाट यशस्वी होओ।

तिष्ठा सु कं मघवन्मा परा गाः सोमस्य नु त्वा सुषुतस्य यक्षि।
पितुर्न पुत्रः सिचमा रभे त इन्द्र स्वादिष्ठया गिरा शचीवः ॥२॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! हामीसित तिमी केही क्षण बस। हाम्रो यज्ञभन्दा टाढा नजाऊ। तिम्रा लागि हामी चाँडै पेलेर तयार गरेको सोमले यज्ञ गर्दछौं। हे शक्तिशाली इन्द्रदेव ! छोराले बाबुको आश्रय लिएझैं हामी असल स्तुतिबाट तिम्रो आश्रय लिन्छौं।

शंसावाध्वर्यो प्रति मे गृणीहीन्द्राय वाहः कृणवाव जुष्टम्।
एदं बर्हिर्यजमानस्य सीदाथा च भूदुक्थमिन्द्राय शस्तम् ॥३॥

हे अध्वर्युहरू हो ! हामी इन्द्रदेवको स्तुति गर्दछौं। तिमीहरू हामीलाई प्रोत्साहित गर। हामी उनका लागि हित हुने खालका स्तोत्र गाऔं। तिमी यजमानले दिएका कुशका आसनमा बस। त्यसो भएर इन्द्रदेवलाई स्तुति वचनहरू धेरै होऊन्।

जायेदस्तं मघवन्त्सेदु योनिस्तदित्त्वा युक्ता हरयो वहन्तु।
यदा कदा च सुनवाम सोममग्निष्ट्वा दूतो धन्वात्यच्छ ॥४॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! स्त्री नै पुरुषको आश्रयस्थल र घर हो। रथमा नारेका अश्वले तिमीलाई उसै घरमा लैजाऊन्। पेलेर तयार गरेपछि हामीले अर्पण गरेको सोम दूतको रूपमा रहेका अग्निदेवले सोझै तिमीकहाँ पुऱ्याउँछन्।

परा याहि मघवन्ना च याहीन्द्र भ्रातरुभयत्रा ते अर्थम्।
यत्रा रथस्य बृहतो निधानं विमोचनं वाजिनो रासभस्य ॥५॥

सबैलाई पालनपोषण गर्न सक्ने ऐश्वर्यले सम्पन्न हे इन्द्रदेव ! तिमी यहाँबाट निकै टाढाको वा नजिकको आफ्नो घरमा रहेका भए पनि हाम्रा यज्ञमा आऊ। दुवै ठाउँमा तिम्रो खाँचो छ। उतापटिका घरमा तिम्री स्त्री छन् भने यहाँ सोम छ। तिमी आफ्नो महान् रथ जहाँ रोक्दछौ, त्यहाँ खुसीको सोर मच्चाउने तिम्रा अश्व मुक्त गराउँछौं।

अपाः सोममस्तमिन्द्र प्र याहि कल्याणीर्जाया सुरणं गृहे ते।
यत्रा रथस्य बृहतो निधानं विमोचनं वाजिनो दक्षिणावत् ॥६॥

हे इन्द्रदेव ! यहाँ सोमपान गर र त्यसपछि घर जाऊ। किनभने तिम्रा घरमा हित गर्ने स्त्री छिन् र त्यहाँ रमाइलो र सुख छ। तिमी जहाँ आफ्नो रथ रोक्दछौ, त्यहाँ डुल्नका लागि भनेर अश्व खोलिदिन्छौ।

इमे भोजा अङ्गिरसो विरूपा दिवस्पुत्रासो असुरस्य वीराः।
विश्वामित्राय ददतो मघानि सहस्रसावे प्र तिरन्त आयुः ॥७॥

यज्ञमा भोज्य पदार्थ चढाउने अङ्गिराका वंशजहरू विभिन्न रूपमा देखा पर्दछन्। देवताहरूमा श्रेष्ठ, वीर मरुत्गणले हामी विश्वामित्रहरूका लागि हजारौं किसिमका ऐश्वर्य प्रदान गरून्। हाम्रो धनधान्य एवं आयु बढाऊन्।

रूपंरूपं मघवा बोभवीति मायाः कृण्वानस्तन्वं परि स्वाम्।
त्रिर्यद्दिवः परि मुहूर्तमागात्स्वैर्मन्त्रैरनृतुपा ऋतावा ॥८॥

हामी इन्द्रदेवको जुन रूपलाई आह्वान गर्दछौं, उनी उस्तै रूपका भइदिन्छन्। आफ्ना मायाले विभिन्न रूप धारण गर्दछन्। उनी ऋतुअनुसार सधैं सोमपान गर्दछन्। मन्त्रद्रष्टाहरूले बोलाउँदा तीनै सवनमा स्वर्गलोकबाट एकै क्षणमा आइपुग्दछन्।

महाँ ऋषिर्देवजा देवजूतोऽस्तभ्नात्सिन्धुमर्णवं नृचक्षाः।
विश्वामित्रो यदवहत्सुदासमप्रियायत कुशिकेभिरिन्द्रः ॥९॥

अत्यन्त महान्, देवताहरूबाट उत्पन्न र प्रेरित, सबै कुराको जानकारी भएका विश्वामित्र ऋषिले जलले भरिएको सिन्धुको वेग रोकिदिए। त्यहाँबाट उनी सुदास राजाका यज्ञमा गए। त्यस बेला कुशिकका वंशजहरूले इन्द्रदेवलाई प्रिय यज्ञस्थमा सम्मान गरे।

हंसाइव कृणुथ श्लोकमद्रिभिर्मदन्तो गीर्भिरध्वरे सुते सचा।
देवेभिर्विप्रा ऋषयो नृचक्षसो वि पिबध्वं कुशिकाः सोम्यं मधु ॥१०॥

इन्द्रियको शक्तिभन्दा धेरै क्षमतासम्पन्न, बुद्धिका धनी मानिसलाई संरक्षण गर्ने हे कुशिकहरू हो ! तिमीहरू हंसको पङ्क्तिजस्तो भएर बसेर स्तुतिमन्त्र उच्चारण गर। यज्ञमा ढुङ्गाले सोम पेलेर तयार गर र सबै देवताहरूसँग सोमरस पान गर।

उप प्रेत कुशिकाश्चेतयध्वमश्वं राये प्र मुञ्चता सुदासः।
राजा वृत्रं जङ्घनत्प्रागपागुदगथा यजाते वर आ पृथिव्याः ॥११॥

हे कुशिकका वंशजहरू हो ! तिमीहरू सबै अश्वनजिकै जाओ। अश्वलाई जोत्याओ। ऐश्वर्य प्राप्तिका लागि राजा सुदासका अश्व खुला छोड। देवराज इन्द्रले पूर्व, पश्चिम र उत्तरका देशमा शत्रुजति मासिसकेका छन्। अब सुदास राजा पृथ्वीका उत्तम स्थानमा यज्ञ कार्य सम्पादित गरून्।

य इमे रोदसी उभे अहमिन्द्रमतुष्टवम्।
विश्वामित्रस्य रक्षति ब्रह्मेदं भारतं जनम् ॥१२॥

हे कुशिकका वंशजहरू ! हामीले द्यावापृथिवीमा इन्द्रदेवको स्तुति गऱ्यौं। विश्वामित्रका वंशजहरूको यो स्तोत्र भरतका वंशजहरूले रक्षा गरून्।

विश्वामित्रा अरासत ब्रह्मेन्द्राय वज्रिणे। करदिन्नः सुराधसः ॥१३॥

विश्वामित्रका वंशजहरूले वज्र धारण गर्ने इन्द्रदेवका लागि स्तोत्र बनाए। इन्द्रदेवले हामीलाई उत्तम धनले सम्पन्न गराऊन्।

किं ते कृण्वन्ति कीकटेषु गावो नाशिरं दुह्रे न तपन्ति घर्मम्।
आ नो भर प्रमगन्दस्य वेदो नैचाशाखं मघवन्रन्धया नः ॥१४॥

हे इन्द्रदेव ! कीकट भन्ने अनार्य देशका बासिन्दाका गाईले तिमीलाई के काम दिन्छन् ? तिनले न दुध दिन्छन् न यज्ञको अग्नि बाल्दछन्। ती गाई यहाँ लिएर आऊ। शोषण गर्नेको धन हामीलाई देऊ। हे ऐश्वर्यवान् इन्द्रदेव ! नीच वंशकालाई अधीनमा राख।

ससर्परीरमतिं बाधमाना बृहन्मिमाय जमदग्निदत्ता।
आ सूर्यस्य दुहिता ततान श्रवो देवेष्वमृतमजुर्यम् ॥१५॥

जमदग्निबाट प्रेरित, अज्ञान नाश गर्ने, द्युलोकसम्म प्रवाहित वाणीले द्युलोकमा ठूलो हल्ला मच्चाउँछ। सूर्यकी पुत्रीले सम्पूर्ण देवताहरूलाई अमृतमय पदार्थ र अक्षय अन्न आदि प्रदान गर्दछिन्।

ससर्परीरभरत्तूयमेभ्योऽधि श्रवः पाञ्चजन्यासु कृष्टिषु।
सा पक्ष्या३ नव्यमायुर्दधाना यां मे पलस्तिजमदग्नयो ददुः ॥१६॥

पलस्ति, जमदग्नि आदि ऋषिहरूले नयाँ अन्न प्रदान गर्ने किसिमको असल कुरो गरे। पँच वर्गका बीचमा रहेको भन्दा बढी अन्न हाम्रा लागि तिमी तुरुन्तै देऊ।

स्थिरौ गावौ भवतां वीडुरक्षो मेषा वि वर्हि मा युगं वि शारि।
इन्द्रः पातल्ये ददतां शरीतोरष्टिनेमे अभि नः सचस्व ॥१७॥

सुदासका यज्ञमा रथका अङ्गहरूलाई विश्वामित्रले स्तुति गर्दछन्। रथमा नारेका गोरु बलिया होऊन्। रथको धुरा बलियो होस्। रथको डन्डी नभाँचियोस्। पाङ्ग्रा नखुस्किऊन्। धुरामा अड्याइएका किलाहरूलाई इन्द्रदेवले सोझ्याइदिऊन्। हे निर्बाध गतिका रथ ! तिमी सधैँभरि हामीले चाहेको जसरी अगाडि जाऊ।

बलं धेहि तनूषु नो बलमिन्द्रानडुत्सु नः।
बलं तोकाय तनयाय जीवसे त्वं हि बलदा असि ॥१८॥

हे इन्द्रदेव ! हाम्रो जिउ बलियो बनाइदेऊ। गोरु आदि पशु बलिया बनाइदेऊ। हाम्रा छोरानातिलाई लामो आयु बाँच्न सक्ने गरी बलिया बनाइदेऊ, किनभने बल प्रदान गर्ने तिमी नै हौ।

अभि व्ययस्व खदिरस्य सारमोजो धेहि स्पन्दने शिंशपायाम्।
अक्ष वीडो वीडित वीडयस्व मा यामादस्मादव जीहिपो नः ॥१९॥

हे इन्द्रदेव ! खयर काठले बनेको रथको डन्डी बलियो पार। रथका स्पन्दनमा सिसौ काठले बनाइएको धुरा र चक्कामा बल हालिदेऊ। हे बलिष्ठ धुरा ! हामीले बलियो पारेका तिमी अझै बलियो होऊ। तीव्र गतिमा जाँदा हामीलाई तिमी नपछार।

अयमस्मान्वनस्पतिर्मा च हा मा च रीरिषत्।
स्वस्त्या गृहेभ्य आवसा आ विमोचनात् ॥२०॥

काठपातले बनेका रथले हामीलाई नखसाओस्, दुःख नदेओस्। हामी घर नपुगुन्जेल हामीलाई भलो गरोस् र अश्व नखोलुन्जेल यसले हाम्रो रक्षा गरोस्।

इन्द्रोतिभिर्बहुलाभिर्नो अद्य याच्छ्रेष्ठाभिर्मघवञ्छूर जिन्व।
यो नो द्वेष्ट्यधरः सस्पदीष्ट यमु द्विष्मस्तमु प्राणो जहातु ॥२१॥

हे वीर र ऐश्वर्यशाली इन्द्रदेव ! विभिन्न असल संरक्षणकारी साधनले हाम्रो रक्षा गर। शत्रु विनाश गरेर हामीलाई खुसी बनाऊ। हाम्रो रिस गर्नेको पतन होस्। हामी जोसित रिसाउँछौँ, त्यसको ज्यान जाओस्।

परशुं चिद्वि तपति शिम्बलं चिद्वि वृश्चति।
उखा चिदिन्द्र येषन्ती प्रयस्ता फेनमस्यति ॥२२॥

हे इन्द्रदेव ! फर्साले रुखलाई दुःख दिएझैँ हामी शत्रुलाई दुःख दिऔँ। रुखबाट सिमलको फूल खसेझैँ शत्रुका अङ्ग खसून्। पकाउँदै गर्दा हाँडीका मुखबाट निस्केझैँ हाम्रा शत्रुका मुखबाट फिँज आओस्।

न सायकस्य चिकिते जनासो लोधं नयन्ति पशु मन्यमानाः।
नावाजिनं वाजिना हासयन्ति न गर्दभं पुरो अश्वान्नयन्ति ॥२३॥

वीर पुरुषहरू बाणको कष्टलाई ठुलो मान्दैनन्, उनीहरू लोभी शत्रुलाई पशु मान्दछन्, उनीहरू बलवान् भएर निर्बललाई खिसी गर्दैनन् र गधाको तुलना अश्वसित गर्दैनन् यो कुरो विश्वामित्रले भनेका छन्।

इम इन्द्र भरतस्य पुत्रा अपपित्वं चिकितुर्न प्रपित्वम्।
हिन्वन्त्यश्वमरणं न नित्यं ज्यावाजं परि णयन्त्याजौ ॥२४॥

हे इन्द्रदेव ! भरतका वंशजहरू शत्रु खुट्याउन जान्दछन्, सँगै गाँसिएर बस्न जान्दैनन्। उनीहरू सङ्ग्राममा प्रेरित अश्वजस्तो भएर धनुषका प्रत्यञ्चाको शक्ति देखाउँछन्।

[सूक्त - ५४]

ऋषि - प्रजापति वैश्वामित्र। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

**इमं महे विदथ्याय शूषं शश्वत्कृत्व ईड्याय प्र जभ्रुः।**
**शृणोतु नो दम्येभिरनीकैः शृणोत्वग्निर्दिव्यैरजस्रः ॥१॥**

स्तोताहरू यज्ञको साधनरूप र स्तुति योग्य अग्निदेवका लागि उत्तम स्तोत्र उच्चारण गर्दछन्। अग्निदेव आफ्ना स्थानमा तेजोमयी किरणले उद्दीप्त भएर स्तुति सुनून्।

**महि महे दिवे अर्चा पृथिव्यै कामो म इच्छञ्चरति प्रजानन्।**
**ययोर्ह स्तोमे विदथेषु देवाः सपर्यवो मादयन्ते सचायोः ॥२॥**

हे स्तोताहरू हो ! यज्ञकार्यमा द्यावापृथिवीमा स्तोत्र सुन्दै पूजाको अभिलाषा गर्ने देवता एकत्रित एवं प्रसन्न हुन्छन्। महान् द्यावापृथिवीको सामर्थ्य जानेर उनको अर्चना गरौं। सम्पूर्ण भोगका इच्छाले मेरो मन विचरणशील छ।

**युवोर्ऋतं रोदसी सत्यमस्तु महे षु णः सु विताय प्र भूतम्।**
**इदं दिवे नमो अग्ने पृथिव्यै सपर्यामि प्रयसा यामि रत्नम् ॥३॥**

सत्यको नियममा स्थिर रहेका हे द्यावापृथिवी ! पुराना ऋषिले तिमीहरूका सत्यको रहस्य जानेर स्तुति गरे। युद्धमा जाने वीर पुरुषले पनि तिमीहरू दुईको महत्त्व बुझेर सधैं प्रार्थना गरेका छन्।

**उतो हि वां पूर्व्या आविविद्र ऋतावरी रोदसी सत्यवाचः।**
**नरश्चिद्वां समिथे शूरसातौ ववन्दिरे पृथिवि वेविदानाः ॥४॥**

सत्यलाई नै धर्मका रूपमा स्वीकार गर्ने हे द्यावापृथिवी ! सत्यको आचरण गर्ने सनातन ऋषिहरूले तिमीहरूबाट हितकारी र खोजेको फल प्राप्त गरे। हे पृथिवी ! युद्धक्षेत्रमा जाने वीर योद्धाले तिम्रो महिमा जानेर तिमीलाई नमस्कार गर्दछन्।

**को अद्धा वेद क इह प्र वोचद्देवाँ अच्छा पथ्याऽका समेति।**
**ददृश्र एषामवमा सदांसि परेषु या गुह्येषु व्रतेषु ॥५॥**

देवत्वमा पुऱ्याउने मार्ग कुन हो भनेर कसले राम्ररी जानेको छ ? कसले त्यसको वर्णन गर्न सक्दछ ? देवताको गोप्य र उच्च स्थानमध्ये निम्नतम स्थान मात्रै देखा पर्दछ।

**कविर्नृचक्षा अभि षीमचष्ट ऋतस्य योना विघृते मदन्ती।**
**नाना चक्राते सदनं यथा वेः समानेन क्रतुना संविदाने ॥६॥**

दूरदर्शी मानिसलाई चिन्ने सूर्यदेव द्यावापृथ्वीलाई सबै तिरबाट हेरिरहन्छन्। रसयुक्त, खुसी प्रदान गर्ने, उस्तै कर्मले गर्दा सम्बन्ध भएका द्यावापृथिवी चराले गुँड बनाएझैं जलको गर्भस्थान अन्तरिक्षमा आफ्ना लागि विभिन्न ठाउँ बनाइरहन्छन्।

**समान्या वियुते दूरेअन्ते ध्रुवे पदे तस्थतुर्जागरूके।**
**उत स्वसारा युवती भवन्ती आदु ब्रुवाते मिथुनानि नाम ॥७॥**

एकापसमा सम्बन्धित भए पनि छुट्टै रहेका द्यावापृथिवी कहिल्यै खिइँदैनन्। अक्षय, अनन्त अन्तरिक्षमा दुवै दिदीबहिनीझैं एकै रूपमा रहन्छन्। यसै किसिमले सृष्टिको क्रम चलिरहेको छ।

**विश्वेदेते जनिमा सं विविक्तो महो देवान्बिभ्रती न व्यथेते।**
**एजद्ध्रुवं पत्यते विश्वमेकं चरत्पतत्रि विषुणं वि जातम् ॥८॥**

द्यावा र पृथिवीले सम्पूर्ण प्राणी र वस्तुलाई भिन्नाभिन्नै स्थान दिएका छन्। महान् सूर्य एवं इन्द्र आदि देवतालाई बोकेर पनि कहिल्यै थाक्दैनन्। स्थावरजङ्गम समस्त प्राणी केवल पृथ्वीमै आश्रय पाउँछन्। पक्षीको हुल डुल्ने ठाउँ द्यावापृथिवीका बीचमा छ।

**सना पुराणमध्येम्यारान्महः पितुर्जनितुर्जामि तन्नः।**
**देवासो यत्र पनितार एवैरुरौ पथि व्युते तस्थुरन्तः ॥९॥**

हे द्यावापृथिवी ! तिमीहरू पिताका रूपमा पाल्ने र माताका रूपमा उत्पन्न गर्ने हौ। हामी तिमीहरूको सनातन र पुरातन यो सम्बन्ध सधैं स्मरण गर्दछौं। तिमीहरूका बीचमा स्तुतिको आशा गर्ने देवताहरू विस्तीर्ण र प्रकाशित पथमा आआफ्ना वाहनले युक्त भएर बसेका हुन्छन्।

इमं स्तोमं रोदसी प्र ब्रवीम्यृदूदराः शृणवन्नग्निजिह्वाः ।
मित्रः सम्राजो वरुणो युवान आदित्यासः कवयः पप्रथानाः ॥१०॥

हे द्यावापृथिवी ! तिमीहरूको स्तोत्र हामी राम्ररी उच्चारण गर्दछौं। सोमरस पेटमा थन्क्याउने, अग्निरूपी जिब्राले सोमरस पान गर्ने, अत्यन्त तेजस्वी, तरुण, मेधावान्, प्रख्यात कर्मयुक्त मित्र, वरुण र आदित्यदेवले हाम्रो स्तुति सुनून्।

हिरण्यपाणिः सविता सुजिह्वस्त्रिरा दिवो विदथे पत्यमानः ।
देवेषु च सवितः श्लोकमश्रेरादस्मभ्यमा सुव सर्वतातिम् ॥११॥

दान गर्नका लागि सुनौलो ऐश्वर्य हातमा लिने, उत्तम प्रेरणा प्रदान गर्ने सवितादेव, यज्ञका तीनै सवनमा आकाशबाट आउँछन्। उनी देवताहरूका बीचमा बसेर हाम्रो स्तोत्र सुनून् र हामीलाई चाहिएका जस्ता सबै फल प्रदान गरून्।

सुकृत्सुपाणिः स्ववाँ ऋतावा देवस्त्वष्टावसे तानि नो धात्।
पूषण्वन्त ऋभवो मादयध्वमूर्ध्वग्रावाणो अध्वरमतष्ट ॥१२।

हितकारी कर्म भएका, मङ्गलमय हात भएका, धनले सम्पन्न, सत्यको नियम पालन गर्ने त्वष्टादेव हामीले रोजेको फल प्रदान गरून्। हे ऋभुहरू हो ! सोम पेल्नका लागि ढुङ्गा लिने ऋत्विक्हरू यज्ञ गर्दछन्। तिमीहरू पूषासँगै त्यो सोम पान गरेर खुसी होओ।

विद्युद्रथा मरुत ऋष्टिमन्तो दिवो मर्या ऋतजाता अयासः ।
सरस्वती शृणवन्यज्ञियासो धाता रयिं सहवीरं तुरासः ॥१३॥

विद्युत्जस्तो प्रभावशाली रथ भएका, हतियार भिर्ने, तेजस्वी शत्रु विनाश गर्ने, यज्ञबाट उत्पन्न हुने, वेगवान् र यजनका लागि योग्य मरुत्हरू तथा सरस्वती देवीले हाम्रो स्तुति सुनून्। हे शीघ्र गमनशील मरुत् हो ! हामीलाई उत्तम वीर पुत्रयुक्त ऐश्वर्य प्रदान गर।

विष्णुं स्तोमासः पुरुदस्ममर्का भगस्येव कारिणो यामनि ग्मन्।
उरुक्रमः ककुहो यस्य पूर्वीर्न मर्धन्ति युवतयो जनित्रीः ॥१४॥

सधैँका तरुण र सबैलाई जन्माउने पराक्रमी विष्णुदेवको नियम दिशाहरूले उल्लङ्घन गर्न सक्दैनन्। मिहिनेती मानिस धनीका नजिकमा पुगेझैँ यज्ञमा उच्चरित हाम्रो पूजनीय स्तोत्र उनै जाँगरिला विष्णुदेवकहाँ पुगोस्।

इन्द्रो विश्वैर्वीर्यैः पत्यमान उभे आ पप्रौ रोदसी महित्वा।
पुरन्दरो वृत्रहा धृष्णुषेणः सङ्गृभ्या न आ भरा भूरि पश्वः ॥१५॥

सबै खालका सामर्थ्यले युक्त इन्द्रदेव आफ्ना महानताले द्यावापृथिवी दुवैलाई भरिभराउ बनाउँछन्। शत्रुको सहर ध्वस्त पार्ने, वृत्रलाई मार्ने, आक्रामक सेनायुक्त तिनले पशुको बथानसहित हाम्रा लागि धनको ठूलो भाग प्रदान गरून्।

नासत्या मे पितरा बन्धुपृच्छा सजात्यमश्विनोश्चारु नाम।
युवं हि स्थो रयिदौ नो रयीणां दात्रं रक्षेथे अकवैरदब्धा ॥१६॥

असत्यबाट टाढै रहने हे अश्विनीकुमार हो ! तिमीहरू दुवै पिताले झैं सोधीकन हामी साधकहरूको रहर पूरा गराउँछौ। तिमीहरू दुवैको नाम जन्मदेखि नै प्रसिद्ध रहेको छ। तिमीहरू दुवै अपार वैभव, धन र ऐश्वर्यले सम्पन्न छौ। हामीलाई धेरै धन देओ। तिमीहरू दुवै अविचलित रहेर हवि प्रदान गर्नेलाई रक्षा गर।

महत्तद्वः कवयश्चारु नाम यद्ध देवा भवथ विश्व इन्द्रे।
सख ऋभुभिः पुरुहूत प्रियेभिरिमां धियं सातये तक्षता नः ॥१७॥

हे देवताहरू हो ! तिमीहरूको नाम र यश अत्यन्तै महान् र सुन्दर छ। यसैका कारणले तिमीहरूले इन्द्रलोकमा दिव्य स्थान पाउँछौ। धेरैले आह्वान गरिने हे इन्द्रदेव ! प्रिय ऋभुहरूसित तिमी मित्रताको भावले रहन्छौ। हामीलाई धन आदि प्रदान गर्ने हाम्रो स्तुति उनीहरूसँगै स्वीकार गर।

अर्यमा णो अदितिर्यज्ञियासोऽदब्धानि वरुणस्य व्रतानि।
युयोत नो अनपत्यानि गन्तोः प्रजावान्नः पशुमाँ अस्तु गातुः ॥१८॥

अर्यमा, देवताहरूकी माता अदिति, यजनीय देवताहरू र अविचल नियम पालन गर्ने वरुणदेवले हाम्रो रक्षा गरून्। हाम्रा मार्गबाट निःसन्तान हुने दोष हटाइदिऊन् र घरलाई सन्तानका साथै पशुले पूर्ण गराऊन्।

देवानां दूतः पुरुध प्रसूतोऽनागान्नो वोचतु सर्वताता।
शृणोतु नः पृथिवी द्यौरुतापः सूर्यो नक्षत्रैरुर्वन्तरिक्षम् ॥१९॥

विभिन्न ढङ्गले प्रकट हुने, देवताहरूका दूतजस्ता अग्निदेवले हामी निष्पाप मानिसलाई असल खालका शिक्षा दिऊन्। पृथ्वी, द्युलोक, जल र सूर्य आदि नक्षत्रले पूर्ण भएका अन्तरिक्षले हाम्रो स्तुति सुनोस्।

शृण्वन्तु नो वृषणः पर्वतासो ध्रुवक्षेमास इडया मदन्तः।
आदित्यैर्नो अदितिः शृणोतु यच्छन्तु नो मरुतः शर्म भद्रम् ॥२०॥

पानीको वर्षा गराएर मानिसलाई कल्याण गर्ने, वनस्पति आदिले खुसी हुने पर्वतदेवले हाम्रो स्तुति सुनून्। देवमाता अदितिले आदित्यहरूसँग हाम्रो स्तुति सुनून्। मरुत्हरूले हामीलाई हितकारी सुख प्रदान गरून्।

सदा सुगः पितुमाँ अस्तु पन्था मध्वा देवा ओषधीः सं पिपृक्त।
भगो मे अग्ने सख्ये न मृध्या उद्रायो अश्यां सदनं पुरुक्षोः ॥२१॥

हाम्रो बाटो सजिलो र अन्नयुक्त होस्। हे देवताहरू हो ! हाम्रा औषधि स्वादिलो रसयुक्त गराओ। हे अग्निदेव ! तिम्रा मित्रताले हाम्रो कुनै पनि ऐश्वर्य नाश नहोस्। तिम्रा कृपाले हामी धन आदि र अन्नले परिपूर्ण घर प्राप्त गरौं।

स्वदस्वा हव्या समिषो दिदीह्यस्मद्र्यक्सं मिमीहि श्रवांसि।
विश्वाँ अग्ने पृत्सु ताञ्जेषि शत्रूनहा विश्वा सुमना दीदिही नः ॥२२॥

हे अग्निदेव ! तिमी हव्य पदार्थ मिठो मानेर खाऊ र हामीलाई अन्न आदि प्रदान गर। सबैजसो अन्न हामीतिर पठाऊ। युद्धमा तिमी शत्रुलाई जित। रमाइलो मनले तिमी सबै दिनहरूलाई उज्याला बनाऊ।

[सूक्त - ५५]

ऋषि - प्रजापति वैश्वामित्र। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

उषसः पूर्वा अध यद्व्यूषुर्महद्वि जज्ञे अक्षरं पदे गोः।
व्रता देवानामुप नु प्रभूषन्महद्देवानामसुरत्वमेकम् ॥१॥

पहिले उषा प्रकाशित भएपछि अविनाशी सूर्यदेव आकाशमा उदाउँदै प्रकट हुन्छन्। यजमानहरू यज्ञ आदि देवकर्म गर्दै देवताका नजिकै उपस्थित हुन्छन्। सबै देवताको महान् शक्ति एउटै हो।

मो षू णो अत्र जुहुरन्त देवा मा पूर्वे अग्ने पितरः पदज्ञाः।
पुराण्योः सद्मनोः केतुरन्तर्महद्देवानामसुरत्वमेकम् ॥२॥

हे अग्निदेव ! यहाँ देवताले हामीलाई दुःख नदिऊन्। देवत्व प्राप्त गरेका हाम्रा पुर्खा पितृहरूले पनि हाम्रो अनिष्ट नगरून्। यज्ञका प्रकाशक पुरातन द्यावापृथिवीका बीचमा उदीयमान महान् ज्योतिरूप सूर्यदेव प्रकट हुन्छन्। सबै देवताको महान् शक्ति एकै हो।

वि मे पुरुत्रा पतयन्ति कामाः शम्यच्छा दीद्ये पूर्व्याणि।
समिद्धे अग्नावृतमिद्वदेम महद्देवानामसुरत्वमेकम् ॥३॥

हे अग्निदेव ! हाम्रा विभिन्न आशा विभिन्न दिशामा गतिशील हुन्छन्। अग्निष्टोम आदि यज्ञमा अग्नि प्रज्वलित हुँदाखेरि हामी पुरातन स्तोत्र जागृत गराउँछौं। अग्नि प्रज्वलित भएपछि हामी स्तोत्र उच्चारण गर्दछौं। सबै देवताहरूको महान् शक्ति एउटै हो।

समानो राजा विभृतः पुरुत्रा शये शयासु प्रयुतो वनानु।
अन्या वत्सं भरति क्षेति माता महद्देवानामसुरत्वमेकम् ॥४॥

जनताका शासक, दीप्तिमान् अग्निदेव अनेकौं स्थानमा यज्ञका लागि स्थापित हुँदै छन्। उनी यज्ञवेदीमाथि सुतेका हुन्छन् र अरणीका माध्यमबाट प्रकट हुन्छन्। मातापितारूपी द्यावापृथिवीले यिनलाई धारण गर्दछन्। वर्षा आदिबाट द्युलोक परिपुष्ट हुन्छ र धर्तीले उनलाई आश्रय प्रदान गर्दछ। सबै देवताहरूको महान् शक्ति एउटै हो।

आक्षित्पूर्वास्वपरा अनूरुत्सद्यो जातासु तरुणीष्वन्तः।
अन्तर्वतीः सुवते अप्रवीता महद्देवानामसुरत्वमेकम् ॥५॥

अग्निदेव ज्यादै पुराना भएर सुकिसकेका रुखमा रहन्छन् र नयाँ उम्रिएका बिरुवामा पनि रहन्छन्।

वनस्पतिहरू कुनैले पनि स्थुल प्रजनन क्रिया गर्दैनन् र अग्निकै कारणले गर्भधारण गरेर फलफूल उत्पन्न गर्दछन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

**शयुः परस्तादध नु द्विमाताबन्धनश्चरति वत्स एकः।**
**मित्रस्य ता वरुणस्य व्रतानि महद्देवानामसुरत्वमेकम् ॥६॥**

पश्चिममा सुत्ने, दुई आमाका सन्तान बाधाविघ्नरहित भएर अन्तरिक्षमा एक्लै घुम्दछन्। यी सबै कार्य मित्र र वरुणदेवका नै हुन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

**द्विमाता होता विदथेषु सम्राडन्वग्रं चरति क्षेति बुध्नः।**
**प्र रण्यानि रण्यवाचो भरन्ते महद्देवानामसुरत्वमेकम् ॥७॥**

दुवै लोक निर्माण गर्ने, यज्ञका होता र यज्ञका स्वामी अग्निदेव आकाशमा सूर्यका रूपमा सबैभन्दा पहिले घुम्दछन्। सबै कर्मको मूल कारणका रूपमा यिनी भूमिमा निवास गर्दछन्। स्तोताका वाणीले यस्ता देवताको गुणगान गर्दछ। सबै देवताहरूको महान् शक्ति एउटै हो।

**शूरस्येव युध्यतो अन्तमस्य प्रतीचीनं ददृशे विश्वमायत्।**
**अन्तर्मतिश्चरति निष्षिधं गोर्महद्देवानामसुरत्वमेकम् ॥८॥**

युद्धमा पराक्रम देखाउने शूरवीरजस्ता तेजस्वी अग्निदेवका अगाडि आउने सबै प्राणी झुकेका देखिन्छन्। सबैले जान्न खोजेका अग्निदेव जल लिएर आकाशमा डुल्छन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

**नि वेवेति पलितो दूत आस्वन्तर्महांश्चरति रोचनेन।**
**वपूंषि बिभ्रदभि नो वि चष्टे महद्देवानामसुरत्वमेकम् ॥९॥**

सबै प्राणीलाई पाल्ने र देवताका दूतजस्ता अग्निदेव वनस्पतिभित्र व्याप्त छन्। आफ्नो तेजले महिमायुक्त भएका अग्निदेव वनस्पतिकै बीचमा विचरण गर्दछन्। यिनले विभिन्न रूप धारण गरेका बेला हामी देख्छौँ। सबै देवताको महान् शक्ति एउटै हो।

**विष्णुर्गोपाः परमं पाति पाथः प्रिया धामान्यमृता दधानः।**
**अग्निष्टा विश्वा भुवनानि वेद महद्देवानामसुरत्वमेकम् ॥१०॥**

अविनाशी, प्रिय, लोकलाई धारण गर्ने र सबैका रक्षक विष्णुदेव आफ्नो मार्गबाट परमधामको रक्षा गर्दछन्। अग्निदेव सबै लोकका ज्ञाता हुन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

**नाना चक्राते यम्या३ वपूंषि तयोरन्यद्रोचते कृष्णमन्यत्।**
**श्यावी च यदरुषी च स्वसारौ महद्देवानामसुरत्वमेकम् ॥११॥**

दिन र रातरूपी दुई जुम्ल्याहा दिदीबहिनी विभिन्न रूप धारण गर्दछन्। तिनीहरूमा एउटी तेज सम्पन्न र अर्की अँध्यारो वर्णकी छन्। अँध्यारो र सफा वर्णका दुई स्त्रीहरू आपसमा दिदीबहिनी नै हुन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

**माता च यत्र दुहिता च धेनू सबर्दुघे धापयेते समीची।**
**ऋतस्य ते सदसीडे अन्तर्महद्देवानामसुरत्वमेकम् ॥१२॥**

सम्पूर्ण विश्वका उत्पादक, पोषक, सन्तुष्टिदायक, अमृतमय पदार्थ प्रदान गर्ने र सम्पूर्ण विश्वलाई आफ्नो रस प्रदान गर्ने यी दुवै हुन्। सबैलाई उत्पन्न गर्ने भएकाले माताका रूपमा र एकले अर्काको पालनपोषण गर्ने रस लिएका हुनाले सन्तानका रूपमा रहेका यी दुवैलाई हामी स्तुति गर्दछौँ। सबै देवताहरूको महान् शक्ति एउटै हो।

**अन्यस्या वत्सं रिहती मिमाय कया भुवा नि दधे धेनुरूधः।**
**ऋतस्य सा पयसापिन्वतेळा महद्देवानामसुरत्वमेकम् ॥१३॥**

अर्काका बाछालाई चाट्ने, कराउने गाईले आफ्ना धुनमा दुध राखेको हुन्छ र ? यी इडा सत्यका दुधले सिञ्चित हुन्छिन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

**पद्या वस्ते पुरुरूपा वपूंष्यूर्ध्वा तस्थौ त्र्यविं रेरिहाणा।**
**ऋतस्य सद्म वि चरामि विद्वान्महद्देवानामसुरत्वमेकम् ॥१४॥**

विराट् पुरुषका गोडाबाट उत्पन्न हुने पृथ्वीले विभिन्न रूप धारण गर्दछिन्। तीनै लोक प्रकाशित गराउने सूर्यले किरणलाई माया गरेर उन्नतिको गति लिन पाउँछन्। सत्यरूपी सूर्यदेवको स्थान चिनेर हामी वन्दना गर्दछौँ। सबै देवताको महान् शक्ति एउटै हो।

पदे इव निहिते दस्मे अन्तस्तयोरन्यद् गुह्यमाविरन्यत्।
सध्रीचीना पथ्या३ सा विषूची महद्देवानामसुरत्वमेकम् ॥१५॥

सुन्दर रूप भएका दिन र रात्रि दुवै अन्तरिक्षको यात्रा गर्दछन्। तिनीहरूमध्ये रात्रि अँध्यारो रङ्गकी हुनाले लुकेझैं हुन्छिन् र दिन उज्यालो रङ्गको हुनाले देखिन्छिन्। यी दुवैको मार्ग एउटै भए पनि अलगअलग रूपमा बाँडिएका छन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

आ धेनवो धुनयन्तामशिश्वीः सबर्दुघाः शशया अप्रदुग्धाः।
नव्यानव्या युवतयो भवन्तीर्महद्देवानामसुरत्वमेकम् ॥१६॥

बालबच्चाविनाका, अमृत दोहन गर्ने, तेजले सम्पन्न, नदुहिएका कोरली गाईहरू प्रत्येक दिन नयाँनौला बनेर अमृत रस प्रदान गर्दछन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

यदन्यासु वृषभो रोरवीति सो अन्यस्मिन्यूथे नि दधाति रेतः।
स हि क्षपावान्त्स भगः स राजा महद्देवानामसुरत्वमेकम् ॥१७॥

वीरले कुनै दिशामा गर्जना गरे पनि अर्को समूहमा गएर आफ्नो वीर्य सेचन गर्दछ। यसै किसिमले जलको वर्षा गरेर पृथ्वीलाई पालन गर्ने र ऐश्वर्य प्रदान गर्ने मेघ सबैको स्वामीका रूपमा प्रतिष्ठित हुन्छ। सबै देवताहरूको महान् शक्ति एउटै हो।

वीरस्य नु स्वश्व्यं जनासः प्र नु वोचाम विदुरस्य देवाः।
षोळ्हा युक्ताः पञ्चपञ्चा वहन्ति महद्देवानामसुरत्वमेकम् ॥१८॥

हे मानिसहरू हो ! वीरका उत्तम पराक्रमको प्रशंसा गर। यिनीहरूको पराक्रम देवताले पनि जानेका छन्। यो छ वयलाई पाँच वटाले वहन गरेका हुन्छन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

देवस्त्वष्टा सविता विश्वरूपः पुपोष प्रजाः पुरुधा जजान।
इमा च विश्वा भुवनान्यस्य महद्देवानामसुरत्वमेकम् ॥१९॥

सबैका उत्पादक, अनेकौं रूपले युक्त त्वष्टादेव अनेकौं किसिमका प्रजालाई उत्पन्न गर्दछन्। उनैले तिनलाई पाल्दछन्। यी सबै भुवन उनै त्वष्टादेवले नै बनाएका हुन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

मही समैरच्चम्वा समीची उभे ते अस्य वसुना न्यृष्टे।
शृण्वे वीरो विन्दमानो वसूनि महद्देवानामसुरत्वमेकम् ॥२०॥

आपसमा मिलेर हिंड्ने द्युलोक र पृथिवी इन्द्रदेवको महिमाले प्रेरित भएर गतिमान् हुन्छन्। दुवै लोकमा इन्द्रदेवको तेज व्याप्त छ। यस्ता शूरवीर इन्द्रदेव शत्रुको धन बलपूर्वक लिन्छन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

इमां च नः पृथिवीं विश्वधाया उप क्षेति हितमित्रो न राजा।
पुरःसदः शर्मसदो न वीरा महद्देवानामसुरत्वमेकम् ॥२१॥

प्रजाका लागि मित्रजस्तै हितैषि राजा सधैं आफ्ना प्रजाका नजिकै रहेझैं इन्द्रदेव पनि हामी सबैलाई धारण गर्ने पृथ्वीका नजिकै रहन्छन्। इन्द्रदेवका सहयोगी वीर मरुत्हरू सधैं अगाडि बढ्ने र हित गर्ने हुन्छन्। सबै देवताहरूको महान् शक्ति एउटै हो।

निष्षिध्वरीस्त ओषधीरुतापो रयिं त इन्द्र पृथिवी बिभर्ति।
सखायस्ते वामभाजः स्याम महद्देवानामसुरत्वमेकम् ॥२२॥

हे इन्द्रदेव ! जल र औषधि तिम्रै ऐश्वर्यले समृद्धिशाली छन्। पृथ्वी पनि तिम्रै ऐश्वर्य धारण गर्दछ। त्यसैले तिम्रा मित्रस्वरूप हामी असल ऐश्वर्यले सम्पन्न होऔं। सबै देवताहरूको महान् शक्ति एउटै हो।

## [सूक्त - ५६]

**ऋषि** - प्रजापति वैश्वामित्र। **देवता** - विश्वेदेवा। **छन्द** - त्रिष्टुप्।

न ता मिनन्ति मायिनो न धीरा व्रता देवानां प्रथमा ध्रुवाणि।
न रोदसी अद्रुहा वेद्याभिर्न पर्वता निनमे तस्थिवांसः ॥१॥

देवताका नियमहरू नै प्रथम र अविचलित हुन्। छल गर्ने र बुद्धिमान्ले तिनलाई खण्डित गर्न सक्दैनन्। द्रोहरहित, ज्ञानसम्पन्न द्यावापृथिवीले पनि तिनको उल्लङ्घन गर्न सक्दैनन्। स्थिर बनाइएका पर्वतहरू कहिल्यै झुक्दैनन्।

षड्भारौं एको अचरन्बिभर्त्यृतं वर्षिष्ठमुपा गाव आगुः।
तिस्रो महीरुपरास्तस्थुरत्या गुहा द्वे निहिते दर्श्येका ॥२॥

स्थायी संवत्सरले छ वटा ऋतु फेर्दछ। सत्यमा चल्ने र अत्यन्त श्रेष्ठ सौर्य संवत्सरको प्रभाव सूर्यका किरणबाट प्राप्त हुन्छ। निरन्तर गतिशील एवं विस्तृत तीनै लोक क्रमशः उच्चतर स्थानमै रहेका छन्। तिनीमध्ये स्वर्ग र अन्तरिक्ष सूक्ष्मरूप हुनाले दुई अदृश्य छन् तथा एउटा बृहदाकारको पृथ्वी देखिन्छ।

त्रिपाजस्यो वृषभो विश्वरूप उत त्र्युधा पुरुध प्रजावान्।
त्र्यनीकः पत्यते माहिनावान्त्स रेतोधा वृषभः शश्वतीनाम् ॥३॥

तीन किसिमका बलले युक्त वीर, अनकौं रूपमा तीन सङ्ख्याले युक्त रहेका, अनेकौं रङ्ग एवं प्रज्ञाले तीनै लोकमा स्थित, शक्तिरूपी तीन सेनाले सम्पन्न सूर्यदेवको उदय हुन्छ। उनी आफ्ना किरणद्वारा सबै औंषधिमा रेतस् नामको प्राणशक्ति सञ्चार गर्छन्।

अभीक आसां पदवीरबोध्यादित्यानामह्वे चारु नाम।
आपश्चिदस्मा अरमन्त देवीः पृथग्व्रजन्तीः परि षीमवृञ्जन् ॥४॥

दिव्य जलधाराले सम्पन्न सूर्यदेवको आभा वनस्पतिको वैभवका रूपमा छरिएको छ। आदित्यगणका सुन्दर नामको हामी गुणगान गर्दछौं। सूर्यदेवसित सम्बद्ध रसले वर्षाका रूपमा पृथ्वीलाई सन्तुष्ट गराउँछ।

त्री षधस्था सिन्धवस्त्रिः कवीनामुत त्रिमाता विदथेषु सम्राट्।
ऋतावरीर्योषणास्तिस्रो अप्यास्त्रिरा दिवो विदथे पत्यमानाः ॥५॥

हे नदीहरू हो ! तिमीहरू तीनै लोकमा निवास गर्दछौ र तीनै किसिमले देवताहरू पनि तीनै लोकमा रहेका छन्। तीनै लोकका निर्माता सूर्यदेव समस्त यज्ञसम्बन्धी प्रवाहका अधिपति हुन्। इडा, सरस्वती र भारती तीन अन्तरिक्षका देवीहरू द्युलोकबाट तीनै सवनयुक्त यस यज्ञमा आऊन्।

त्रिरा दिवः सवितर्वार्याणि दिवेदिव आ सुव त्रिर्नो अह्नः।
त्रिधातु राय आ सुवा वसूनि भग त्रातर्धिषणे सातये धाः ॥६॥

हे सबैलाई प्रेरित गर्ने सूर्यदेव ! तिमी दिव्यलोकबाट आएर दिनहुँ तीन पटक हामीलाई असल धन प्रदान गर। ऐश्वर्यवान्, सबैका रक्षक सूर्यदेव ! हामीलाई दिउँसोका सवनमा तीन किसिमका धन प्रदान गर। हे बुद्धिमान् ! हामीलाई धन प्राप्त गर्न योग्य बनाऊ।

त्रिरा दिवः सविता सोषवीति राजाना मित्रावरुणा सुपाणी।
आपश्चिदस्य रोदसी चिदुर्वी रत्नं भिक्षन्त सवितुः सवाय ॥७॥

सबैलाई प्रेरित गर्ने सूर्यदेवले हामीलाई द्युलोकबाट तीन किसिमका धन प्रदान गरून्। तेजस्वी र हितकारी हात भएका मित्र, वरुण, अन्तरिक्ष र विशाल द्यावापृथिवी पनि सूर्यदेवबाटै धनको वैभव वृद्धि होस् भन्ने चाहन्छन्।

त्रिरुत्तमा दूणशा रोचनानि त्रयो राजन्त्यसुरस्य वीराः।
ऋतावान इषिरा दूडभासस्त्रिरा दिवो विदथे सन्तु देवाः ॥८॥

क्षय नहुने, सबैलाई जित्ने र द्युतिसम्पन्न तीन लोक छन्। यी तीनै स्थानमा कलात्मक संवत्सरका अग्नि, वायु र सूर्य नामक तीन पुत्रहरू रमाइलोसित रहेका छन्। सत्यनिष्ठ, उत्साहवर्धक कार्यमा निरन्तर तत्पर र कहिल्यै नझुक्ने देवताहरू दिनमा तीन पटक हाम्रा यज्ञमा आइदिऊन्।

[सूक्त - ५७]

ऋषि - विश्वामित्र गाथिन। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

प्र मे विविक्वाँ अविदन्मनीषां धेनुं चरन्तीं प्रयुतामगोपाम्।
सद्यश्चिद्या दुदुहे भूरि धासेरिन्द्रस्तदग्निः पनितारो अस्याः ॥१॥

हे ज्ञानवान् इन्द्रदेव ! असल संरक्षणका अभावमा जताततै भौंतारिएका गाईजस्ता हामीलाई राम्रो संरक्षण प्रदान गर। खोजेको फल प्राप्त गराउने हाम्रो स्तुति इन्द्रदेवले स्वीकार गरून्।

इन्द्रः सु पूषा वृषणा सुहस्ता दिवो न प्रीताः शशयं दुदुह्रे।
विश्वे यदस्यां रणयन्त देवाः प्र वोऽत्र वसवः सुम्नमश्याम् ॥२॥

मन परेको फल प्रदान गरेर सबैलाई भलो गर्ने मित्रावरुण, इन्द्रदेव, पूषादेव र अन्य देवताहरू खुसी

भएर अन्तरिक्षमा रहेका मेघलाई दोहन गर्दछन्। सबै देवताहरू हाम्रो स्तुतिबाट आनन्द प्राप्त गर्दछन। त्यसँले हे वसुदेवहरू हो ! तिमीहरूका कृपादृष्टिले दिएको सुख हामी प्राप्त गरौं।

या जामयो वृष्ण इच्छन्ति शक्तिं नमस्यन्तीर्जानते गर्भमस्मिन्।
अच्छा पुत्रं धेनवो वावशाना महश्चरन्ति बिभ्रतं वपूंषि ॥३॥

वनस्पतिहरू प्राणशक्ति रूपी वर्षा गराउने इन्द्रदेवका शक्तिको कृपा चाहन्छन्। विनम्र र सिर्जन सामर्थ्यसित परिचित हुनाले फल्न चाहने औषधिहरू उनका नजिक पुग्दछन्।

अच्छा विविक्मि रोदसी सुमेके ग्राव्णो युजानो अध्वरे मनीषा।
इमा उ ते मनवे भूरिवार ऊर्ध्वा भवन्ति दर्शता यजत्राः ॥४॥

यज्ञमा सोम पेल्ने ढुङ्गा बोकेर हामी सोचविचारसाथ विशिष्ट रूपमा शोभायमान द्यावापृथ्वीको स्तुति गर्दछौं। हे अग्निदेव ! अनेकौंबाट वरण गर्न योग्य, सुन्दर र पूजनीय तिम्रा ज्वालाहरू मानिसको हितका लागि माथितिर उचालिन्छन्।

या ते जिह्वा मधुमती सुमेधा अग्ने देवेषूच्यत उरूची।
तयेह विश्वाँ अवसे यजत्राना सादय पायया चा मधूनि ॥५॥

हे अग्निदेव ! तिम्रो मधुर, तेजस्वी, प्रज्ञासम्पन्न र सर्वत्र व्याप्त रहेको ज्वाला देवताको आह्वान गर्नका लागि प्रेरित हुन्छ। त्यस ज्वालाबाट समस्त पूजनीय देवतालाई यस यज्ञमा ल्याइदेऊ। देवताहरूलाई मिठो सोमरस अर्पित गरेर दुष्टबाट हाम्रो रक्षा गर।

या ते अग्ने पर्वतस्येव धारासश्चन्ती पीपयद्देव चित्रा।
तामस्मभ्यं प्रमतिं जातवेदो वसो रास्व सुमतिं विश्वजन्याम् ॥६॥

हे दिव्यतासम्पन्न अग्निदेव ! कुवाटोबाट जोगाउने तिम्रो बुद्धि मेघको धाराजस्तै भएर सबैलाई सन्तुष्ट गराउँछ। हे सबैका आश्रय बनेका, सबै कुराको ज्ञान भएका देवता ! हामीलाई संसारको हित गर्ने खालको बुद्धि प्रदान गर।

[सूक्त - ५८]

**ऋषि** - विश्वामित्र गाथिन। **देवता** - अश्विनीकुमार। **छन्द** - त्रिष्टुप्।

धेनुः प्रत्नस्य काम्यं दुहानान्तः पुत्रश्चरति दक्षिणायाः।
आ द्योतनिं वहति शुभ्रयामोषसः स्तोमो अश्विनावजीगः ॥१॥

अग्निदेवका लागि उचित किसिमले प्रकृतिको रस उषाले दोहन गरेकी छिन्। उषाका पुत्र सूर्य मध्यदिनमा विचरण गर्दछन्। सफा दीप्तिले झलमल्ल भएका सूर्यदेव प्रकाश फिंजाउँदै यसै उषाकालमा अश्विनीकुमारका लागि स्तोत्र गाउँछन्।

सुयुग्वहन्ति प्रति वामृतेनोर्ध्वा भवन्ति पितरेव मेधाः।
जरेथामस्मद्वि पणेर्मनीषां युवोरवश्चकृमा यातमर्वाक् ॥२॥

हे अश्विनीकुमार हो ! असल रथमा गतिलो गरी नारिएको अश्व तिमीहरूलाई यस यज्ञमा ल्याउन खोज्दै छ। मातापितासित पुग्न खोज्ने बालकझैं यिनीहरू तिमीकहाँ पुग्दछन्। कुटिल बुद्धि भएकाहरूलाई हामीबाट टाढा राख। तिमीहरू दुईका लागि हामी हविष्यान्न तयार गर्दछौं। तिमीहरू हाम्रा नजिकै आओ।

सुयुग्भिरश्वैः सुवृता रथेन दस्राविमं शृणुतं श्लोकमद्रेः।
किमङ्ग वां प्रत्यवर्तिं गमिष्ठाहुर्विप्रासो अश्विना पुराजाः ॥३॥

हे शत्रुलाई विनाश गर्ने अश्विनीकुमार हो ! सुन्दर चक्र भएका, उत्तम अश्व नारिएका रथमा बसेर यज्ञशालामा आओ। सोम निचोरेर तयार गर्नेहरूले गाएको स्तोत्र सुन। उहिल्यैदेखि मेधावीहरू तिमीहरूको खुसीका लागि सोमसँगै यस्तो स्तुति गाउँछन्।

आ मन्येथामा गतं कच्चिदेवैर्विश्वे जनासो अश्विना हवन्ते।
इमा हि वां गोऋजीका मधूनि प्रमित्रासो न ददुरुस्रो अग्रे ॥४॥

हे अश्विनीकुमार हो ! तिमीहरू हाम्रो स्तुति स्वीकार गर। अश्वसहित आओ। स्तोताहरू तिमीहरूलाई बोलाउँदै छन्। सूर्योदयभन्दा पहिले दुध र मह मिसाएको सोम मित्रजस्ता यजमानहरू दिइरहेका छन्।

तिरः पुरू चिदश्विना रजांस्याङ्गूषो वां मघवाना जनेषु।
एह यातं पथिभिर्देवयानैर्दस्राविमे वां निधयो मधूनाम् ॥५॥

हे ऐश्वर्यशाली शत्रुसंहारक अश्विनीकुमारहरू हो ! धेरै मानिसलाई छोडेर भए पनि यहाँ आओ। सबै स्तोताहरू तिमीहरूकै लागि स्तोत्र उच्चारण गर्दै छन्। जुन बाटोबाट देवताहरू हिँड्दछन्, उसै बाटोबाट तिमीहरू यहाँ आओ। किनभने यहाँ तिमीहरूका लागि मिठो सोमरस भाँडामा तयार गरिएको छ।

पुराणमोकः सख्यं शिवं वां युवोर्नरा द्रविणं जह्नाव्याम्।
पुनः कृण्वानाः सख्या शिवानि मध्वा मदेम सह नू समानाः ॥६॥

हे नेतृत्वकर्ता अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैको पुरानो मित्रता सबैका लागि हितकारी छ। तिमीहरूको धन सधैं हामीतिरै आओस्। तिमीहरूको हितकारी मित्रताले हामी सधैं लाभान्वित होऔँ। मिठो सोमले तिमीहरूलाई सन्तुष्ट पारेर खुसी हुन पाऔँ।

अश्विना वायुना युवं सुदक्षा नियुद्भिश्च सजोषसा युवाना।
नासत्या तिरोअह्न्यं जुषाणा सोमं पिबतमस्रिधा सुदानू ॥७॥

हे अश्विनीकुमार हो ! तिमीहरू उत्तम, सामर्थ्यवान्, नित्य तरुण, असत्यविहीन र उत्तम फलदाता हौ। वायुजत्तिकै वेगवान् अश्वमा तिमीहरू निर्बाध गतिले यहाँ आओ। यहाँ आएर दिनको अन्तिम भागमा पेलेर तयार पारेको सोम प्रेमपूर्वक पान गर।

अश्विना परि वामिषः पुरूचीरीयुर्गीर्भिर्यतमाना अमृध्राः।
रथो ह वामृतजा अद्रिजूतः परि द्यावापृथिवी याति सद्यः ॥८॥

हे अश्विनीकुमार हो ! तिमीहरूलाई जताततैबाट मनग्गे मात्रामा हविष्यान्न फैला पर्दछ। कर्म गर्न सिपालु ऋत्विक्हरू दोषमुक्त भएर आफ्ना स्तुतिसँगै तिमीहरूको सेवा गर्छन्। सोमका लहरा कुट्ने ढुङ्गाको शब्द सुनेर तिमीहरूको रथ द्यावापृथिवीको परिभ्रमण गर्दै यज्ञस्थलमा प्रकट हुन्छ।

अश्विना मधुषुत्तमो युवाकुः सोमस्तं पातमा गतं दुरोणे।
रथो ह वां भूरि वर्पः करिक्रत्सुतावतो निष्कृतमागमिष्ठः ॥९॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरूले रुचाउने सोमरस मिठो रसले परिपूर्ण छ, यहाँ आएर पान गर। प्रशस्त तेज फिँजाउँदै तिमीहरूको रथ सोमले भिजेका यजमानका घरमा बारम्बार आइरहन्छ।

[सूक्त - ५९]

ऋषि – विश्वामित्र गाथिन। देवता – मित्र। छन्द – त्रिष्टुप् गायत्री।

मित्रो जनान्यातयति ब्रुवाणो मित्रो दाधार पृथिवीमुत द्याम्।
मित्रः कृष्टीरनिमिषाभि चष्टे मित्राय हव्यं घृतवज्जुहोत ॥१॥

सबै मानिसलाई कर्ममा प्रवृत्त रहने प्रेरणा मित्रदेव प्रदान गर्दछन्। रस आदि उपलब्ध गराउने आफ्ना असल कर्मले पृथिवी र द्युलोक उनी धारण गर्दछन्। सत्कर्ममा लागेका जुनसुकै मानिसलाई उनी आफ्नो कृपा वर्साउँछन्। हे मानिसहरू हो ! यस्ता मित्रदेवका लागि घिउसहितको हविष्यान्न प्रदान गर।

प्र स मित्र मर्तो अस्तु प्रयस्वान्यस्त आदित्य शिक्षति व्रतेन।
न हन्यते न जीयते त्वोतो नैनमंहो अश्नोत्यन्तितो न दूरात् ॥२॥

हे आदित्य र मित्रदेव ! जुन मानिस यज्ञ आदि कर्मले युक्त भएर तिमीहरूका लागि हविष्यान्न समर्पित गर्दछ, त्यो अन्नले धनी हुन्छ। तिम्रो संरक्षणमा रहने हुनाले न त ऊ नाश नै हुन्छ, न जीवनमा दुःख नै पाउँछ। पाप उसका नजिक पनि पुग्न सक्दैन, न त टाढाबाटै प्रभावित गर्न सक्दछ।

अनमीवास इडया मदन्तो मितज्ञवो वरिमन्ना पृथिव्याः।
आदित्यस्य व्रतमुपक्षियन्तो वयं मित्रस्य सुमतौ स्याम ॥३॥

हे मित्रदेव ! हामी रोगबाट मुक्त भएर र पोषक अन्नले पोसिएर खुसी रहौँ। हामी विशाल पृथ्वीमा सोझो हिसाबले बस्ने गरौँ। हामी आदित्यदेवका नियमका अधीनमा रहेर जीवन निर्वाह गरौँ। हामीलाई मित्रदेवको कृपा सधैं प्राप्त भइरहोस्।

अयं मित्रो नमस्यः सुशेवो राजा सुक्षत्रो अजनिष्ट वेधाः ।
तस्य वयं सुमतौ यज्ञियस्यापि भद्रे सौमनसे स्याम ॥४॥

नमस्कार योग्य, उत्तम, सुखदायक, अधिकारसम्पन्न, बलसम्पन्न, सबैका मित्र सूर्यदेव उदाए। हामी यजमानहरू पूजनीय सूर्यदेवको हितकारी अनुग्रह सधैं प्राप्त गरौं।

महाँ आदित्यो नमसोपसद्यो यातयज्जनो गृणते सुशेवः ।
तस्मा एतत्पन्यतमाय जुष्टमग्नौ मित्राय हविरा जुहोत ॥५॥

हे ऋत्विकहरू हो ! आदित्यदेव अत्यन्त महान् छन्। समस्त मानिसका कर्ममा उनी लाग्छन्। सबै मानिसहरू नमस्कार गर्दै यिनको उपासना गरून्। स्तुति गर्नेलाई उत्तम सुखले समृद्ध गर्दछन्। स्तुति गर्न योग्य मित्रदेवलाई अत्यन्त प्रिय हवि समर्पित गरौं।

मित्रस्य चर्षणीधृतोऽवो देवस्य सानसि। द्युम्नं चित्रश्रवस्तमम् ॥६॥

वर्षाको पानीका रूपमा सबै प्राणीले पाएको सूर्यदेवको कृपाले जीवन रक्षा गर्दछ। उनी सबैका लागि काम लाग्ने धनधान्य प्रदान गर्दछन्।

अभि यो महिना दिवं मित्रो बभूव सप्रथाः । अभि श्रवोभिः पृथिवीम् ॥७॥

सूर्यदेवको महिमा द्युलोकभरि व्याप्त रहेको छ। कीर्तिमान सूर्यदेवले आफ्ना किरणले जल वर्साएर अन्न आदिले पृथ्वीलाई लाभान्वित गराएका छन्।

मित्राय पञ्च येमिरे जना अभिष्टिशवसे। स देवान्विश्वान्बिभर्ति ॥८॥

शत्रु जित्न सक्ने सामर्थ्य भएका मित्रदेवका लागि पाँचै वर्णले आहुति प्रदान गर्दछन्। मित्रदेव आफ्ना सामर्थ्यले सबै देवतालाई धारण गर्दछन्।

मित्रो देवेष्वायुषु जनाय वृक्तबर्हिषे। इष इष्टव्रता अकः ॥९॥

देवता र मानिसका बीचमा आदरको भावना राख्ने साधकका लागि मित्रदेव उपयोगी अन्न आदि प्रदान गर्दछन्। व्रतको अनुशासनमा रहनेलाई यस्तो कृपा प्राप्त हुन्छ।

## [सूक्त - ६०]

ऋषि – विश्वामित्र गाथिन। देवता – ऋभुगण इन्द्र। छन्द – जगती।

इहेह वो मनसा बन्धुता नर उशिजो जग्मुरभि तानि वेदसा।
याभिर्मायाभिः प्रतिजूतिवर्पसः सौधन्वना यज्ञियं भागमानश ॥१॥

शत्रुमाथि आक्रमण गरेर तेजस्विता प्रकट गर्ने, उत्तम धनुर्धारी वीर हे ऋभुगण ! सिपालु कार्यबाट तिमीहरू पूजनीय पद पाउँछौ। जुन मानिस तिमीहरूभैं असल कार्य विचारपूर्वक पूरा गर्दछन्, उनीहरूसँग मनैदेखि तिमीहरूको बन्धुभाव रहन्छ।

याभिः शचीभिश्चमसाँ अपिंशत यया धिया गामरिणीत चर्मणः ।
येन हरी मनसा निरतक्षत तेन देवत्वमृभवः समानश ॥२॥

हे ऋभुहरू हो ! जुन सामर्थ्यले चमसलाई उचित विभाजन गर्‍यौ, जुन बुद्धिले गाईलाई चर्मयुक्त बनायौ, जुन मनसायले तिमीहरूले इन्द्रका अश्वलाई सक्षम बनायौ, उसै सामर्थ्यका कारण तिमीहरूले देवत्व प्राप्त गर्‍यौ।

इन्द्रस्य सख्यमृभवः समानशुर्मनोर्नपातो अपसो दधन्विरे।
सौधन्वनासो अमृतत्वमेरिरे विष्ट्वी शमीभिः सुकृतः सुकृत्यया ॥३॥

मानिसको अवनति रोक्ने, उत्तम कार्य गर्ने, ऋभुदेवहरूले इन्द्रदेवको मित्रता प्राप्त गरे। सत्कर्म निर्वाह गर्ने र असल धनुर्धारी ऋभुहरूले आफ्नै सामर्थ्य र सत्कर्मका कारण सर्वत्र व्याप्त भएर अमर पदवी उपलब्ध गरे।

इन्द्रेण याथ सरथं सुते सचाँ अथो वशानां भवथा सह श्रिया।
न वः प्रतिमै सुकृतानि वाघतः सौधन्वना ऋभवो वीर्याणि च ॥४॥

मेधावी तथा असल धनुर्धारी हे ऋभुदेवहरू हो ! तिमीहरू सोमयागमा इन्द्रदेवसँग एउटै रथमा बसेर जान्छौ। जुन साधक तिमीहरूप्रति मित्रभाव राख्दछन्, उनीहरूकहाँ धन र ऐश्वर्य लिएर जान्छौ। तिमीहरूको असल पराक्रमी कार्य कसैसँग दाँज्न सकिँदैन।

इन्द्र ऋभुभिर्वाजवद्भिः समुक्षितं सुतं सोममा वृषस्वा गभस्त्योः।
धियेषितो मघवन्दाशुषो गृहे सौधन्वनेभिः सह मत्स्वा नृभिः ॥५॥

हे इन्द्रदेव ! बलसम्पन्न ऋभुहरूसँग यस यज्ञमा आएर राम्ररी पेलेर तयार गरेको सोम ग्रहण गर। तिमी आफ्नो सद्भावपूर्ण बुद्धिले प्रेरित भएर सुधन्वाका पुत्रसँग दानीका घरमा गएर रमाऊ।

इन्द्र ऋभुमान्वाजवान्मत्स्वेह नोऽस्मिन्त्सवने शच्या पुरुष्टुत।
इमानि तुभ्यं स्वसराणि येमिरे व्रता देवानां मनुषश्च धर्मभिः ॥६॥

अनेकौंबाट प्रशंसनीय हे इन्द्रदेव ! तिमी सामर्थ्यशाली ऋभुहरू र इन्द्राणीसहित हाम्रा यज्ञमा आएर आनन्दित होऊ। मानिस र देवताका सबै श्रेष्ठ कर्महरू तिम्रै कारणले नियमित बनेर गतिमान हुने गरेका छन्।

इन्द्र ऋभुभिर्वाजिभिर्वाजयन्निह स्तोमं जरितुरुप याहि यज्ञियम्।
शतं केतेभिरिषिरेभिरायवे सहस्रणीथो अध्वरस्य होमनि ॥७॥

हे इन्द्रदेव ! स्तोताको स्तुतिले प्रसन्न भएर उनीहरूका लागि मनग्गे अन्न उब्जाइदेऊ र बलशाली ऋभुहरूसँग यज्ञमा आऊ। मरुत्हरू सय वटा फुर्तिला अश्वमा यजमानले सत्कर्म वृद्धि गर्नका लागि सम्पन्न गरेका यस महान् यज्ञमा आऊन्।

[सूक्त – ६१]

ऋषि – विश्वामित्र गाथिन। देवता – उषा। छन्द – त्रिष्टुप्।

उषो वाजेन वाजिनि प्रचेताः स्तोमं जुषस्व गृणतो मघोनि।
पुराणी देवि युवतिः पुरन्धिरनु व्रतं चरसि विश्ववारे ॥१॥

अन्न र ऐश्वर्यकी अधिकारिणी हे उषा ! तिमी प्रखर ज्ञानले सम्पन्न भएर स्तोताको स्तोत्र सुन। सबैले रुचाउने हे उषादेवी ! तिमी पुरातन भईकन पनि तरुणीजस्तै सुन्दर छ्यौ। तिमी विशेष बुद्धिमती भएर यस यज्ञमा आऊ।

उषो देव्यमर्त्या वि भाहि चन्द्ररथा सूनृता ईरयन्ती।
आ त्वा वहन्तु सुयमासो अश्वा हिरण्यवर्णां पृथुपाजसो ये ॥२॥

सुनौलो सौन्दर्य भएका रथमा विराजमान हे अमर उषादेवी ! तिमी प्रीतियुक्त, सत्यरूपी वचनले बोलाइने गरेकी छ्यौ। तिमी सूर्यका किरणहरूले प्रकाशित छ्यौ। विशेष बलशाली र सुनजस्तै तेजस्वी अश्व रथमा राम्ररी जोतिन्छन्। तिमीलाई लिएर तिनीहरू यज्ञस्थलमा आऊन्।

उषः प्रतीची भुवनानि विश्वोर्ध्वा तिष्ठस्यमृतस्य केतुः।
समानमर्थं चरणीयमाना चक्रमिव नव्यस्या ववृत्स्व ॥३॥

हे उषादेवी ! तिमी सम्पूर्ण भुवनमा भ्रमण गर्ने अमृतस्वरूपा हौ। सूर्यदेवको ध्वजाजस्तै आकाशको उच्च स्थानमा रहन्छ्यौ। हे सधैंकी नौली उषादेवी ! तिमी एकै मार्गमा यात्रा गर्ने आकाशमा विचरण गरिरहने सूर्यदेवका चक्रको अङ्गजस्तै बारम्बार उसै मार्गमा हिँडिरहन्छ्यौ।

अव स्यूमेव चिन्वती मघोन्युषा याति स्वसरस्य पत्नी।
स्वर्जनन्ती सुभगा सुदंसा आन्ताद्दिवः पप्रथ आ पृथिव्याः ॥४॥

ऐश्वर्यशालिनी उषा वस्त्रजस्तै शोभाले छोपिदिने खालकी छिन्। तिनी अन्धकार हटाउँदै सूर्यकी पत्नीका रूपमा हिँड्ने गर्दछिन्। सौभाग्यशालिनी र सत्कर्ममा लागिरहने उषा द्युलोक र पृथ्वीका अन्तिम भागसम्म प्रकाशित हुन्छिन्।

अच्छा वो देवीमुषसं विभातीं प्र वो भरध्वं नमसा सुवृक्तिम्।
ऊर्ध्वं मधुधा दिवि पाजो अश्रेत्प्र रोचना रुरुचे रण्वसन्दृक् ॥५॥

हे स्तोताहरू हो ! तिमीहरू सबैका अगाडि देखा पर्ने उषादेवीलाई नमस्कारपूर्वक स्तुति गर। मधुरता धारण गर्ने उषा द्युलोकको उच्च भागमा आफ्नो तेज स्थिर गराउँछिन्। रमणीय शोभाले सम्पन्न भएकी तेजस्विनी उषा अत्यन्त दीप्तियुक्त भइरहेकी छिन्।

ऋतावरी दिवो अर्कैरबोध्या रेवती रोदसी चित्रमस्थात्।
आयतीमग्न उषसं विभातीं वाममेषि द्रविणं भिक्षमाणः ॥६॥

सत्यको मार्ग अनुसरण गर्ने उषादेवी द्युलोकभन्दा परबाट आउने किरणले देखिन्छिन्। ऐश्वर्यशालिनी उषा विविध रूपमा द्युलोक र पृथिवी छोप्दछिन्। हे अग्निदेव ! अगाडि प्रकट हुने उषाबाट हविष्य पाउन खोज्ने तिमी असल धन पाउँछौ।

ऋतस्य बुध्न उषसामिषण्यन्वृषा मही रोदसी आ विवेश।
महो मित्रस्य वरुणस्य माया चन्द्रेव भानुं वि दधे पुरुत्रा ॥७॥

वर्षाका प्रेरक सूर्यदेव दिनको थालनीमा उषालाई प्रेरित गर्दै द्यावापृथिवीका माझमा प्रकट हुन्छन्। त्यस बेलाकी उषा मित्र र वरुणदेवको प्रभाका रूपमा रहेर आफ्नो सुनौलो प्रकाश चारैतिर फिँजाउँछिन्।

[सूक्त - ६२]

ऋषि - विश्वामित्र गाथिन। देवता - वरुण बृहस्पति पूषा। छन्द - गायत्री त्रिष्टुप्।

इमा उ वां भृमयो मन्यमाना युवावते न तुज्या अभूवन्।
क्व१ त्यदिन्द्रावरुणा यशो वां येन स्मा सिनं भरथः सखिभ्यः ॥१॥

हे इन्द्रावरुण ! शत्रु वशमा गराउने तिम्रा गतिशील शस्त्र, सज्जनको रक्षा गर्ने होऊन्। तिनीहरू कसैबाट पनि नष्ट नहोऊन्। तिमी जसबाट आफ्ना मित्र आदि आफन्तलाई अन्न आदि प्रदान गर्दछौ, त्यो यश कहाँ रहेको छ ?

अयमु वां पुरुतमो रयीयञ्छश्वत्तममवसे जोहवीति।
सजोषाविन्द्रावरुणा मरुद्भिर्दिवा पृथिव्या शृणुतं हवं मे ॥२॥

हे इन्द्रावरुण ! धन र ऐश्वर्यको कामना गर्ने यी महान् यजमान आफ्नो रक्षाका लागि तिमीहरू दुईलाई बारम्बार आह्वान गर्दछन्। हे मरुत्‌गण ! द्यावा र पृथिवीसँगै तिमीहरू पनि हाम्रो निवेदन सुन।

अस्मे तदिन्द्रावरुणा वसु ष्यदस्मे रयिर्मरुतः सर्ववीरः।
अस्मान्वरूत्रीः शरणैरवन्त्वस्मान्होत्रा भारती दक्षिणाभिः ॥३॥

हे इन्द्र र वरुणदेव ! खोजेको धन हामीलाई फेला परोस्। हे मरुत्‌गण ! हामीलाई सर्वसक्षम वीर पुत्रसहित ऐश्वर्य प्रदान गर। सर्वस्वीकार्य देवशक्तिले संरक्षण प्रदान गरून्। होत्रा र भारतीले सद्भावपूर्ण वाणीद्वारा हाम्रो पालनपोषण गरून्।

बृहस्पते जुषस्व नो हव्यानि विश्वदेव्य। रास्व रत्नानि दाशुषे ॥४॥

सबै खालका दिव्य गुणले युक्त हे बृहस्पतिदेव ! हामीले प्रदान गरेको पुरोडाश तिमी सेवन गर। तिमी हविष्यान्न प्रदान गर्ने यजमानलाई असल र काम लाग्ने धन देऊ।

शुचिमर्कैर्बृहस्पतिमध्वरेषु नमस्यत। अनाम्योज आ चके ॥५॥

हे ऋत्विक्‌हरू हो ! यज्ञमा अर्चन गर्न योग्य स्तोत्रका वाणीले पवित्र बृहस्पतिदेवलाई नमस्कार गर। शत्रुसँग पराजित हुन नपर्ने बल र पराक्रमको आशा उनीबाट गरौँ।

वृषभं चर्षणीनां विश्वरूपमदाभ्यम्। बृहस्पतिं वरेण्यम् ॥६॥

मानिसहरूको रहर पूरा गराउने, अनेकौं रूप धारण गर्न सक्ने, कसैका दबावमा नआउने र वरण गर्न योग्य बृहस्पतिदेवको हामी पूजाअर्चना गर्दछौँ।

इयं ते पूषन्नाघृणे सुष्टुतिर्देव नव्यसी। अस्माभिस्तुभ्यं शस्यते ॥७॥

हे पूषादेव ! नौलो र असल स्तोत्र तिम्रै लागि हो। हामी तिम्रै लागि स्तुति पाठ गर्छौं।

तां जुषस्व गिरं मम वाजयन्तीमवा धियम्। वधूयुरिव योषणाम् ॥८॥

हे पूषादेव ! तिमी हाम्रो यो असल भनाइ सुन र शक्ति प्राप्त गर्ने रहर भएका बुद्धिलाई उसै गरी रक्षा गर, जसरी कुनै पुरुषले आफ्नी स्त्रीको सुरक्षा गर्दछ।

यो विश्वाभि विपश्यति भुवना सं च पश्यति। स नः पूषाविता भुवत् ॥९॥

यस विश्वब्रह्माण्डलाई विशिष्ट रूपले हेरविचार गर्ने पूषादेव हाम्रा पनि संरक्षक होऊन्।

**तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि। धियो यो नः प्रचोदयात् ॥१०॥**

हाम्रो बुद्धि सन्मार्गमा प्रेरित गर्ने सवितादेवको वरण योग्य विकृति नाशक, दिव्यता प्रदान गर्ने तेजलाई हामी स्वीकार गर्दछौं।

**देवस्य सवितुर्वयं वाजयन्तः पुरंध्या। भगस्य रातिमीमहे ॥११॥**

संसारका उत्पादक, प्रेरक र प्रकाशक सवितादेव तेज धारण गर्दछन्। हामी उनीबाट वैभवको कामना गर्दछौं।

**देवं नरः सवितारं विप्रा यज्ञैः सुवृक्तिभिः। नमस्यन्ति धियेषिताः ॥१२॥**

सद्बुद्धियुक्त, सत्कर्ममा लाग्ने ज्ञानीहरू असल स्तोत्रले सवितादेवलाई स्तुति गर्छन्।

**सोमो जिगाति गातुविद् देवानामेति निष्कृतम्। ऋतस्य योनिमासदम् ॥१३॥**

सन्मार्गका ज्ञाता सोमदेव सर्वत्र गतिशील छन्। उनी देवताहरूका लागि उपयुक्त र श्रेष्ठ यज्ञस्थलमा पुग्दछन्।

**सोमो अस्मभ्यं द्विपदे चतुष्पदे च पशवे। अनमीवा इषस्करत् ॥१४॥**

सोमदेवले हामी स्तोता र दुई खुट्टे एवं चार खुट्टे पशुका निम्ति आरोग्यप्रद असल अन्न प्रदान गरून्।

**अस्माकमायुर्वर्धयन्नभिमातीः सहमानः। सोमः सधस्थमासदत् ॥१५॥**

सोमदेवले हाम्रो रोग हटाएर आयु बढाइदिऊन्। शत्रु परास्त गर्दै यज्ञस्थलमा बसून्।

**आ नो मित्रावरुणा घृतैर्गव्यूतिमुक्षतम्। मध्वा रजांसि सुक्रतू ॥१६॥**

हे मित्रावरुण हो ! तिमीहरू गाईलाई घिउले सम्पन्न गराओ र हाम्रा घरवासमा पनि असल रसले सेचन गर।

**उरुशंसा नमोवृधा मह्ना दक्षस्य राजथः। द्राघिष्ठाभिः शुचिव्रता ॥१७॥**

हे असल कर्मले सम्पन्न मित्रावरुण हो ! तिमीहरू हविष्यान्न एवं स्तुतिबाट दरिला भएर गौरवशाली यश प्राप्त गर।

**गृणाना जमदग्निना योनावृतस्य सीदतम्। पातं सोममृतावृधा ॥१८॥**

जमदग्नि ऋषिले स्तुति गरेका हे मित्रावरुण हो ! तिमीहरू यज्ञस्थलमा आओ र तयार गरेको सोमरस पान गर।

**॥इति तृतीयं मण्डलम् ॥**

तेस्रो मण्डल सकियो।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ चतुर्थं मण्डलम्॥

॥चौथो मण्डल॥

[सूक्त - १]

**ऋषि** - वामदेव। **देवता** - अग्निवरुण। **छन्द** - त्रिष्टुप् अष्टि अतिजगती धृति।

**त्वां ह्यग्ने सदमित्समन्यवो देवासो देवमरतिं न्येरिर इति क्रत्वा न्येरिरे। अमर्त्यं यजत मर्त्येष्वा देवमादेवं जनत प्रचेतसं विश्वमादेवं जनत प्रचेतसम्॥**

हे अविनाशी र तेजसम्पन्न वरुणदेव ! उत्साहयुक्त समस्त देवताहरू आआफ्ना पराक्रमले तिमीलाई प्राप्त गर्दछन्। अविनाशी, प्रकाशमान र अत्यन्त विद्वान् हे अग्निदेव ! मानिसले हितकारी यज्ञ गर्न भनेर तिमीलाई उत्पन्न गरे। तिमी समस्त कर्म जान्दछौ। देवताहरूले समस्त यज्ञमा उपस्थित रहनका लागि तिमीलाई उत्पन्न गरे।

**स भ्रातरं वरुणमग्न आ ववृत्स्व देवाँ अच्छा सुमती यज्ञवनसं ज्येष्ठं**
**यज्ञवनसम्। ऋतावानमादित्यं चर्षणीधृतं राजानं चर्षणीधृतम॥२॥**

हे अग्निदेव ! वरुणदेव तिम्रा दाजुभाइ हुन्। आहुतिका योग्य, यज्ञ सेवन गर्ने, जल धारण गरेका, यज्ञमा वन्दनीय, सद्‌बुद्धि भएका वरुणदेव अत्यन्त ओजले सम्पन्न छन्। वरुणदेवलाई याजकहरूतर्फ प्रेरित गर।

**सखे सखायमभ्या ववृत्स्वाशुं न चक्रं रथ्येव रंह्यास्मभ्यं दस्म रंह्या।**
**अग्ने मृळीकं वरुणे सचा विदो मरुत्सु विश्वभानुषु।**
**तोकाय तुजे शुशुचान शं कृध्यस्मभ्यं दस्म शं कृधि॥३॥**

हे असल मित्रजस्ता अग्निदेव ! द्रुतगामी अश्वले छिटोछरितो रथ कुदाएझैं तिमी आफ्ना मित्र वरुणदेवलाई हामीतिर लिएर आऊ। हे अग्निदेव ! वरुणदेव र तेजसम्पन्न मरुत्हरूसँगै तिमी सोमरस ग्रहण गर। हे तेजस्वी अग्निदेव ! हाम्रा सन्तानलाई सुख प्रदान गर। हे दर्शनीय अग्निदेव ! हामीलाई सुखी बनाऊ।

**त्वं नो अग्ने वरुणस्य विद्वान्देवस्य हेडोऽवयासिसीष्ठाः।**
**यजिष्ठो वह्नितमः शोशुचानो विश्वा द्वेषांसि प्र मुमुग्ध्यस्मत्॥४॥**

सर्वज्ञ, कान्तिमान्, पूजनीय र देवताको आहुति पुऱ्याउने हे अग्निदेव ! हाम्रा लागि वरुण देवतालाई प्रसन्न गर र सबै तिरबाट हाम्रो रक्षा गर।

**स त्वं नो अग्नेऽवमो भवोती नेदिष्ठो अस्या उषसो व्युष्टौ।**
**अव यक्ष्व नो वरुणं रराणो वीहि मृळीकं सुहवो न एधि॥५॥**

हे अग्निदेव ! यस उषाकालमा आफ्नो रक्षक शक्तिसहित हाम्रा अत्यन्त नजिक आएर हाम्रो रक्षा गर। हाम्रो आहुति वरुणदेवलाई पुऱ्याएर उनलाई खुसी गराऊ। सधैँभरि बोलाउन योग्य तिमी आफैं पनि हाम्रो सुखदायी हवि ग्रहण गर।

**अस्य श्रेष्ठा सुभगस्य सन्दृग्देवस्य चित्रतमा मर्त्येषु।**
**शुचि घृतं न तप्तमघ्न्यायाः स्पार्हा देवस्य मंहनेव धेनोः॥६॥**

गोठालासित भएको दुध र घिउ पवित्र तेजले युक्त भएझैं गाई दान गर्नेको दान प्रशंसनीय हुन्छ। असल धनले सम्पन्न अग्निदेवको प्रार्थनीय तेज मानवहरूका बीचमा अत्यन्त पूजनीय र रुचि लाग्दो हुन्छ।

**त्रिरस्य ता परमा सन्ति सत्या स्पार्हा देवस्य जनिमान्यग्नेः।**
**अनन्ते अन्तः परिवीत आगाच्छुचिः शुक्रो अर्यो रोरुचानः॥७॥**

अत्यन्त गुणसम्पन्न अग्निदेवका तीन वटा विशाल रूप चिनिएका छन्। अग्निदेव अनन्त अन्तरिक्षव्याप्त, सबैलाई पवित्र गराउने, आलोकयुक्त र अत्यन्त तेजस्वी छन्। उनी हाम्रा यज्ञस्थलमा आऊन्।

स दूतो विश्वेदभि वष्टि सद्मा होता हिरण्यरथो रंसुजिह्वः।
रोहिदश्वो वपुष्यो विभावा सदा रण्वः पितुमतीव संसत् ॥८॥

अग्निदेव देवतालाई बोलाउने, सन्देश पुऱ्याउने, सुनौलो रथ भएका र उत्तम ज्वाला भएका छन्। उनी समस्त असल घरमा गमन गर्ने रहर गर्दछन्। राता वर्णका घोडा भएका, सुन्दर कान्तिमान् अग्निदेव धनधान्यले सम्पन्न घरजस्तै सुखदायी छन्।

स चेतयन्मनुषो यज्ञबन्धुः प्र तं मह्या रशनया नयन्ति।
स क्षेत्यस्य दुर्यासु साधन्देवो मर्तस्य सधनित्वमाप ॥९॥

अध्वर्युहरू नेतीका बलले अग्नि प्रकट गर्दछन्। यज्ञमा सबैका हितैषि दाजुभाइजस्ता अग्निदेव सबैलाई नै ज्ञानले सम्पन्न बनाउँछन्। उनी याजकका घरमा चाहिएको कुरो पूरा गराउँछन्। प्रकाशयुक्त अग्दिनेव आफ्ना उपासकसँगै रहन्छन्।

स तू नो अग्निर्नयतु प्रजानन्नच्छा रत्नं देवभक्तं यदस्य।
धिया यद्विश्वे अमृता अकृण्वन्द्यौष्पिता जनिता सत्यमुक्षन् ॥१०॥

रहर बुझ्ने अग्निदेवसित सबैले खोजेको ऐश्वर्य छ। त्यो असल ऐश्वर्य हामी प्राप्त गरौँ। अविनाशी देवताले यज्ञका निम्ति अग्निदेवलाई उत्पन्न गरे। द्युलोक उनको पालनकर्ता हो। याजकहरू अविनाशी अग्निदेवलाई घिउको आहुतिले सेचन गर्दछन्।

स जायत प्रथमः पस्त्यासु महो बुध्ने रजसो अस्य योनौ।
अपादशीर्षा गुहमानो अन्तायोयुवानो वृषभस्य नीडे ॥११॥

अग्निदेव मानिसका घरमा मुख्य अगुवाजस्तो भएका छन्। विशाल अन्तरिक्षमा र धर्तीमा उनी उत्पन्न भए। शिर र पाउविनाका अग्निदेव सबैका भित्र रहन्छन्। उनी जल वर्षा गराउने बादलसित आफूलाई मिसाउँछन्।

प्र शर्ध आर्त प्रथमं विपन्यॉं ऋतस्य योना वृषभस्य नीडे।
स्पार्हो युवा वपुष्यो विभावा सप्त प्रियासोऽजनयन्त वृष्णे ॥१२॥

आफ्नो रहर पूरा गर्नका लागि होताले स्वीकार गर्न योग्य, सधैँका युवा र सुन्दर शरीर हुने तेजयुक्त अग्निदेवलाई प्रकट गरे। हे अग्निदेव ! जलको उत्पत्तिस्थान र जल बर्साउने मेघको स्थान आकाश हो। तिमी आकाशमा रहेर प्रार्थनाबाट सर्वश्रेष्ठ शक्ति ग्रहण गर्दछौ।

अस्माकमत्र पितरो मनुष्या अभि प्र सेदुर्ऋतमाशुषाणाः।
अश्मव्रजाः सुदुघा वव्रे अन्तरुदुस्रा आजन्नुषसो हुवानाः ॥१३॥

हाम्रा पुर्खाले यस लोकमा यजन गरेर अग्निदेवलाई आफ्नो बनाए। उनीहरूले उषाको प्रार्थना गर्दै पर्वतका गुफाभित्र अँध्यारामा लुकेका दुधालु गाई मुक्त गरे।

ते मर्मृजत ददृवांसो अद्रिं तदेषामन्ये अभितो वि वोचन्।
पश्वयन्त्रासो अभि कारमर्चन्विदन्त ज्योतिश्चकृपन्त धीभिः ॥१४॥

तिनै पुर्खाले पहाड भत्काएर अग्निदेवलाई पवित्र गरे। उनीहरूका यस कामको बयान सम्पूर्ण संसारभरि भयो। उनीहरूलाई पशु जोगाउने उपाय थाहा थियो। चाहिएको फल प्रदान गर्ने अग्निदेवलाई उनीहरूले प्रार्थना गरेर ज्योति प्राप्त गरे। आफ्ना विवेकले गर्दा उनीहरू शक्तिसम्पन्न भए।

ते गव्यता मनसा दृध्रमुब्धं गा येमानं परि षन्तमद्रिम्।
दृळ्हं नरो वचसा दैव्येन व्रजं गोमन्तमुशिजो वि वव्रुः ॥१५॥

अङ्गिरा गोत्रका पुर्खाले गाई पाउने आशाले ढोका थुनेर अनेक किसिमले बन्द र राम्रा गाईले भरिएको गोठरूपी पर्वत अग्निसम्बन्धी वैदिक स्तोत्रका बलले उघारे।

ते मन्वत प्रथमं नाम धेनोस्त्रिः सप्त मातुः परमाणि विन्दन्।
तज्जानतीरभ्यनूषत व्रा आविर्भुवदरुणीर्यशसा गोः ॥१६॥

वाणीको शब्द प्रशंसनीय हुन्छ भन्ने कुरो सबैभन्दा पहिले बुझेर अङ्गिरा आदि ऋषिले एक्काईस छन्दका स्तोत्र जाने। त्यसपछि उसै वाणीले उषाको स्तुति गरे। त्यसपछि तेजबाट रातो किरण प्रकट भयो।

नेशत्तमो दुधितं रोचत द्यौरुद्देव्या उषसो भानुरर्त।
आ सूर्यो बृहतस्तिष्ठदज्रां ऋजु मर्तेषु वृजिना च पश्यन् ॥१७॥

रातले बनाएको अँध्यारो उषादेवीका प्रेरणाले नाश भयो। त्यसपछि आकाश उघ्रियो र उषादेवीको सौन्दर्य प्रकट भयो। त्यसपछि मानिसहरूका असल र कमसल कर्म हेर्ने सूर्यदेव विशाल पर्वतमाथि चढे।

आदित्पश्चा बुबुधाना व्यख्यन्नादिद्रत्नं धारयन्त द्युभक्तम्।
विश्वे विश्वासु दुर्यासु देवा मित्र धिये वरुण सत्यमस्तु ॥१८॥

सूर्योदय भएपछि सबै ऋषिले धर्तीमा अग्निदेवलाई प्रज्वलित गरेर तेजसम्पन्न आभूषण ग्रहण गरे। त्यसपछि सम्पूर्ण पूजनीय देवता सबै घरमा गए। बाधा निवारण गर्ने र मित्रजस्ता हे अग्निदेव ! जसले तिम्रो साधना गर्दछ, उसका सबै रहर पूरा होऊन्।

अच्छा वोचेय शुशुचानमग्निं होतारं विश्वभरसं यजिष्ठम्।
शुच्यूधो अतृणन्न गवामन्धो न पूतं परिषिक्तमंशोः ॥१९॥

हे अत्यन्त प्रकाशवान्, देवतालाई आह्वान गर्ने र विश्वको पालनपोषण गर्ने अग्निदेव ! तिमी सबैभन्दा ठूला वन्दनीय छौ, त्यसैले हामी तिम्रो प्रार्थना गर्दछौं। याजकहरूले तिमीलाई आहुति प्रदान गर्नका लागि मात्रै गाईका थुनबाट पवित्र दुध दुहेका होइनन् र सोमका लहरा पेलेका होइनन्, तर पनि उनीहरूको प्रार्थना स्वीकार गर।

विश्वेषामदितिर्यज्ञियानां विश्वेषामतिथिर्मानुषाणाम्।
अग्निर्देवानामव आवृणानः सुमृडीको भवतु जातवेदाः ॥२०॥

अग्निदेव अदितिजस्तै समस्त यज्ञीय देवता उत्पन्न गर्दछन् र समस्त मानवका वन्दनीय अतिथि हुन्। मानिसको प्रार्थना स्वीकार गर्ने अग्निदेव स्तोतालाई सुख, समृद्धि र प्रसन्नता प्रदान गरून्।

## [सूक्त - २]

**ऋषि** - वामदेव गौतम। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

यो मर्त्येष्वमृत ऋतावा देवो देवेष्वरतिर्निधायि।
होता यजिष्ठो मह्ना शुचध्यै हव्यैरग्निर्मनुष ईरयध्यै ॥१॥

अविनाशी अग्निदेव मानिसका बीचमा आफ्नै रूपमा रहन्छन्। देवताका बीचमा शत्रु पराजित गर्ने रूपमा रहन्छन्। उनै सबैभन्दा बढी वन्दनीय अग्निदेवलाई आह्वान गर्दछौं। उनी आफ्ना महिमाले याजकलाई आहुतिद्वारा प्रदीप्त गराउने प्रेरणा दिन्छन्।

इह त्वं सूनो सहसो नो अद्य जातो जातॉं उभयॉं अन्तरग्ने।
दूत ईयसे युयुजान ऋष्व ऋजुमुष्कान्वृषणः शुक्रांश्च ॥२॥

हे शक्तिका पुत्र अग्निदेव ! तिमी हेरिरहूँजस्ता छौ। आज तिमी हाम्रा यस कार्यमा प्रकट भएका छौ। शक्तिशाली, प्रकाशमान, कोमल र पुष्ट अश्व रथमा जोडेर उपस्थित देवता र मानिसका बीचमा दूत बनेर पुग्दछौ।

अत्या वृधस्नू रोहिता घृतस्नू ऋतस्य मन्ये मनसा जविष्ठा।
अन्तरीयसे अरुषा युजानो युष्मांश्च देवान्विश आ च मर्तान् ॥३॥

हे सत्यका स्वरूप अग्निदेव ! राता रङ्गका र अन्नजल वर्साउने र मनभन्दा चाँडो कुद्ने अश्वको हामी प्रार्थना गर्दछौं। तिमी आफ्ना वेगवान् अश्व रथमा नारेर मानिस र देवताका बीचमा डुलिराख।

अर्यमणं वरुणं मित्रमेषामिन्द्राविष्णू मरुतो अश्विनोत।
स्वश्वो अग्ने सुरथः सुराधा एदु वह सुहविषे जनाय ॥४॥

हे अग्निदेव ! तिमी असल रथ, अश्व र धनले सम्पन्न छौ। मानिसमध्ये उत्तम आहुति हुने याजकका लागि मित्र, वरुण, अर्यमा, इन्द्र, मरुत्गण, विष्णु र अश्विनीकुमारलाई यस यज्ञस्थलमा ल्याऊ।

गोमॉं अग्नेऽविमॉं अश्वी यज्ञो नृवत्सखा सदमिदप्रमृष्यः।
इळावॉं एषो असुर प्रजावान्दीर्घो रयिः पृथुबुध्नः सभावान् ॥५॥

हे बलशाली अग्निदेव ! हाम्रो यज्ञ गाई, अश्व, भेडा, अन्न र मानिसले सम्पन्न होस्। आहुति र सन्तानले यज्ञ सम्पन्न होस्। स्थायी धन र असल प्रेरणाले यज्ञ परिपूर्ण होस्।

यस्त इध्मं जभरत्सिष्विदानो मूर्धानं वा ततपते त्वाया।
भुवस्तस्य स्वतवाँः पायुरग्ने विश्वस्मात्सीमघायत उरुष्य ॥६॥

हे अग्निदेव ! तिम्रा लागि समिधा बटुलेर ल्याउने व्यक्ति पसिनाले भिजेका हुन्छन्। तिम्रो आशाले आफ्नो टाउको दाउराका भारीले दुखाउने व्यक्तिलाई पालेर ऐश्वर्यशाली बनाऊ र समस्त शत्रुबाट जोगाऊ।

यस्ते भरादन्नियते चिदन्नं निशिषन्मन्द्रमतिथिमुदीरत्।
आ देवयुरिनधते दुरोणे तस्मिन्रयिर्ध्रुवो अस्तु दास्वान् ॥७॥

हे अग्निदेव ! धनधान्यको आशाले खुसीसाथ हविष्यान्न प्रदान गर्दै सोमरस दिएर अतिथिजस्तै सम्मान गर्ने र देवत्व प्राप्तिका लागि घरमा तिमीलाई प्रदीप्त गर्नेका सन्तान उदार होऊन् र धर्मको कर्तव्य दरिलो रूपमा पालन गर्ने होऊन्।

अस्त्वा दोषा य उषसि प्रशंसात्प्रियं वा त्वा कृणवते हविष्मान्।
अश्वो न स्वे दम आ हेम्यावान्तमंहसः पीपरो दाश्वांसम् ॥८॥

हे अग्निदेव ! विहानबेलुकै तिम्रो प्रार्थना गर्ने र हविष्यान्न समर्पित गरेर तिमीलाई खुसी पार्ने व्यक्ति गरिबीबाट पार हुन्छन्। त्यस बेला उनीहरू बटुवाले सुनौलो काठी लगाएका घोडामा कठिन मार्ग पार गरेझैं हुन्छन्।

यस्तुभ्यमग्ने अमृताय दाशद् दुवस्त्वे कृणवते यतस्रुक्।
न स राया शशमानो वि योषन्नैनमंहः परि वरदघायोः ॥९॥

हे अविनाशी अग्निदेव ! सुरो हातमा लिएर आहुति प्रदान गर्ने र तिम्रो सुसार गर्ने याजकले धनका अभावमा दुःख नपाऊन् र हिंसक प्राणीले तिनलाई नसताऊन्।

यस्य त्वमग्ने अध्वरं जुजोषो देवो मर्तस्य सुधितं रराणः।
प्रीतेदसद्धोत्रा सा यविष्ठासाम यस्य विधतो वृधासः ॥१०॥

हे हर्ष र आलोकले सम्पन्न तरुण अग्निदेव ! असल र लोक कल्याणकारी भावनाले युक्त व्यक्तिका यज्ञको भाग तिमी ग्रहण गर्दछौ। ती याज्ञिक निश्चित रूपले नै सुखी हुनेछन्। यज्ञ आदि सत्कर्म सम्पन्न गर्ने असल याजकको हामी पनि अनुसरण गरौं।

चित्तिमचित्तिं चिनवद्वि विद्वान्पृष्ठेव वीता वृजिना च मर्तान्।
राये च नः स्वपत्याय देव दितिं च रास्वादितिमुरुष्य ॥११॥

हे अग्निदेव ! घोडा पाल्नेले घोडाका पिठ्युँको काठी झिकेर सजिलो बनाएझैं तिमी पनि व्यक्तिका पाप र पुण्य छुट्याऊ। हे अग्निदेव ! हामीलाई असल सन्तानका साथ ऐश्वर्य प्रदान गर र दान गर्ने बानी बसाएर उदार बनाऊ।

कविं शशासुः कवयोऽदब्धा निधारयन्तो दुर्यास्वायोः।
अतस्त्वं दृश्याँ अग्न एतान्पड्भिः पश्येरद्भुताँ अर्य एवैः ॥१२॥

हे मेधावी अग्निदेव ! तिमी असल मानिसका घरमा यज्ञको अग्निका रूपमा विद्यमान रहने र कहिल्यै परास्त नहुने खालका छौ। देवताले तिम्रा मेधावी रूपको प्रार्थना गर्दछन्। हे अग्निदेव ! गतिशील तेजले समस्त देवता र मानिसलाई तेजस्वी बनाऊ।

त्वमग्ने वाघते सुप्रणीतिः सुतसोमाय विधते यविष्ठ।
रत्नं भर शशमानाय घृष्वे पृथुश्चन्द्रमवसे चर्षणिप्राः ॥१३॥

नेता र तेजस्वीमध्ये श्रेष्ठ तथा नित्य तरुण हे अग्निदेव ! तिमी सबै मानिसको रहर पूरा गराउँछौ। सोमरस पेल्ने, सेवासुसार गर्ने र प्रार्थना गर्ने याजकलाई तिमी अत्यन्त हर्ष प्रदान गरेर सबै तिरबाट रक्षा गर।

अधा ह यद्वयमग्ने त्वाया पड्भिर्हस्तेभिश्चकृमा तनूभिः।
रथं न क्रन्तो अपसा भुरिजोर्ऋतं येमुः सुध्य आशुषाणाः ॥१४॥

हे अग्निदेव ! सिकर्मीले रथ सजाएझैं तिम्रो कामना गर्दै यज्ञको काममा लागेर उत्तम कर्म गर्ने अङ्गिरा आदि ऋषिले आफ्नै पाखुराका बलले सत्यरूपी तिमीलाई प्रकट गरेका थिए। हामी पनि आफ्ना हात, गोडा र शरीरले उही काम गर्दछौं।

अधा मातुरुषसः सप्त विप्रा जायेमहि प्रथमा वेधसो नॄन्।
दिवस्पुत्रा अङ्गिरसो भवेमाद्रिं रुजेम धनिनं शुचन्तः ॥१५॥

हामी सूर्यका सात पुत्रहरू सबैभन्दा पहिला विद्वान् हौं। हामीले माता उषाबाट अग्निका किरण उत्पन्न गरायौं। हामी आलोकवान् सूर्यदेवका पुत्र अङ्गिरा हौं। हामी तेजसम्पन्न भएर ऐश्वर्यसम्पन्न पहाड फोर्दछौं।

अधा यथा नः पितरः परासः प्रत्नासो अग्न ऋतमाशुषाणाः।
शुचीदयन्दीधितिमुक्थशासः क्षामा भिन्दन्तो अरुणीरप व्रन् ॥१६॥

हाम्रा पुर्खाले गतिला, पुराना र सत्यरूपी यज्ञका कर्ममा निरन्तर लागेर असल स्थान र साहस प्राप्त गरे। उनीहरूले स्तोत्र उच्चारण गरेर अन्धकार नाश गरे र अरुण रङ्ग हुने उषालाई प्रकट गराए।

सुकर्माणः सुरुचो देवयन्तोऽयो न देवा जनिमा धमन्तः।
शुचन्तो अग्निं ववृधन्त इन्द्रमूर्वं गव्यं परिषदन्तो अग्मन् ॥१७॥

फलामको काम गर्नेले निरन्तर खलाँती चलाएर फलाम पवित्र बनाएझैं असल यज्ञ आदि कर्ममा लागेका र आशा गर्ने याजक यज्ञ आदि कर्मले मानिसको जुनी पवित्र गराउँछन्। अग्निदेवलाई प्रदीप्त गरेर इन्द्रदेवलाई समृद्ध गराउँछन्। चारै तिरबाट छेकेर उनले गाईको ठूलो बथान प्राप्त गरेका थिए।

या यूथेव क्षुमति पश्वो अख्यद्देवानां यज्जनिमान्त्युग्र।
मर्तानां चिदुर्वशीरकृप्रन्वृधे चिदर्य उपरस्यायोः ॥१८॥

हे तेजस्वी अग्निदेव ! अन्नले भरिएको र पशुको बथान भएका घरको प्रशंसा गरेझैं देवताको प्रार्थना गर्नेका सन्तान सबल हुन्छन् र स्वामीहरू पनि भरणपोषण गर्नका लागि सक्षम हुन्छन्।

अकर्म ते स्वपसो अभूम ऋतमवस्रन्नुषसो विभातीः।
अनूनमग्निं पुरुधा सुश्चन्द्रं देवस्य मर्मृजतश्चारु चक्षुः ॥१९॥

हे प्रकाशपुञ्ज अग्निदेव ! हामी तिम्रो उपासना गर्दछौं, त्यसैलाई हामी सत्कर्म भन्दछौं। आलोकमयी उषाहरू सबैले तिम्रै तेज धारण गर्दछन्। त्यस तेजबाट लाभान्वित हुँदै हामी विभिन्न किसिमले खुसी गराउन तिम्रो उपासना गर्दछौं।

एता ते अग्न उचथानि वेधोऽवोचाम कवये ता जुषस्व।
उच्छोचस्व कृणुहि वस्यसो नो महो रायः पुरुवार प्र यन्धि ॥२०॥

हे ज्ञानका खानी अग्निदेव ! तिमी विधाता हौ। तिम्रा लागि हामी समस्त स्तोत्र उच्चारण गर्दछौं। त्यो स्वीकार गरेर तिमी प्रदीप्त होऊ। हामीलाई अत्यधिक ऐश्वर्यले सम्पन्न बनाऊ। धेरैले रोज्ने गरिएका हे अग्निदेव ! हामीलाई असल सम्पत्ति देऊ।

## [सूक्त - ३]

**ऋषि** - वामदेव गौतम। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

आ वो राजानमध्वरस्य रुद्रं होतारं सत्ययजं रोदस्योः।
अग्निं पुरा तनयित्नोरचित्ताद्धिरण्यरूपमवसे कृणुध्वम् ॥१॥

हे सत्पुरुष हो ! चञ्चल बिजुलजस्तै आउने मृत्युभन्दा पहिले आफ्नो रक्षा गर्नका लागि यज्ञका स्वामी, देवता निम्त्याउने, रुद्रका रूपजस्ता, द्यावापृथिवीका बीचमा वास्तविक यजन प्रक्रिया चलाउने, सुनौलो आभायुक्त अग्निदेवलाई पूजन गर।

अयं योनिश्चकृमा यं वयं ते जायेव पत्य उशती सुवासाः।
अर्वाचीनः परिवीतो नि षीदेमा उ ते स्वपाक प्रतीचीः ॥२॥

हे अग्निदेव ! स्त्रीले पतिको रहर पूरा गराउन राम्रो पहिरनमा सजिएर आफूनजिकै सजिलो आसन उपलब्ध गराएझैं हामी तिमीलाई सजिलो स्थानमा उपयुक्त आसन प्रदान गर्दछौं। हे सत्कर्म गर्ने अग्निदेव ! तिमी आफ्ना तेजले सजिएर आऊ, हामी गुणगान गर्दछौं।

आशृण्वते अदृपिताय मन्म नृचक्षसे सुमृडीकाय वेधः।
देवाय शस्तिममृताय शंस ग्रावेव सोता मधुषुद्यमीडे॥३॥

हे अग्निदेव ! याजकले गरेको स्तुति तिमी ध्यान दिएर सुन्दछौ। सम्पूर्ण जगत्‌लाई एउटै दृष्टिले हेर्ने र सज्जनलाई सुख दिने तिमी प्रखर तेजस्वी र अविनाशी छौ।

त्वं चिन्नः शम्या अग्ने अस्या ऋतस्य बोध्यृतचित्स्वाधीः।
कदा त उक्था सधमाद्यानि कदा भवन्ति सख्या गृहे ते॥४॥

विद्वान् र सत्कर्म गर्ने हे अग्निदेव ! हाम्रा यज्ञको अनुष्ठान तिमी बुझ। तिम्रा लागि गाएका स्तोत्रले कहिले खुसी बनाउलान् ? आफ्ना घरमा तिमीलाई मित्रभावले प्रतिष्ठित गराउने अवसर हामीलाई कहिले होला ?

कथा ह तद्वरुणाय त्वमग्ने कथा दिवे गर्हसे कन्न आगः।
कथा मित्राय मीढुषे पृथिव्यै ब्रवः कदर्यम्णे कद्भगाय॥५॥

हे अग्निदेव ! हाम्रा पापकर्मको चर्चा वरुणदेवसँग किन गर्दछौ ? तिमी सूर्यदेवसित हाम्रो निन्दा किन गर्दछौ ? हाम्रो अपराध के छ र ? खुसीयाली प्रदान मित्रदेव, पृथ्वी, अर्यमा र भगदेव नामका देवतासित तिमीले हाम्रो कस्तो कुरो गर्‍यौ ?

कद्धिष्ण्यासु वृधसानो अग्ने कद्वाताय प्रतवसे शुभंये।
परिज्मने नासत्याय क्षे ब्रवः कदग्ने रुद्राय नृघ्ने॥६॥

हे अग्निदेव ! तिमी यज्ञको हविले दरिला भए पनि त्यस्तो कुरो किन गर्दछौ ? महान् शक्तिशाली, हितकारी, सबै ठाउँमा जान सक्ने, सत्यका पक्षमा रहने वायुदेवसित र पृथ्वीसित त्यस्तो कुरो किन भन्दछौ ? हे अग्निदेव ! पाप गर्ने व्यक्तिको संहार गर्ने रुद्रदेवसित त्यो कुरो किन गर्दछौ ?

कथा महे पुष्टिम्भराय पूष्णे कद्रुद्राय सुमखाय हविर्दे।
कद्विष्णव उरुगायाय रेतो ब्रवः कदग्ने शरवे बृहत्यै॥७॥

हे अग्निदेव ! राम्रो पोषण दिने पूषादेवसित त्यस पापको कुरो किन गर्दछौ ? असल यज्ञका आहुतिले समृद्ध रुद्रदेवसित, अति प्रशंसनीय विष्णुदेवसित त्यस्तो पापकर्म किन भन्दछौ ? बृहत् संवत्सरसित यस्तो पापयुक्त कुरो किन गर्दछौ ?

कथा शर्धाय मरुतामृताय कथा सूरे बृहते पृच्छ्यमानः।
प्रति ब्रवोऽदितये तुराय साधा दिवो जातवेदश्चिकित्वान्॥८॥

हे अग्निदेव ! सत्यका प्रतिमूर्तिजस्ता मरुत्‌हरूसँग हाम्रो त्यो पापकर्म किन भन्दछौ ? सोधे भनेर आदित्य, अदिति र शीघ्रगामी वायुसित पापकर्म किन भन्यौ। हे अग्निदेव ! तिमी समस्त पदार्थलाई जान्दछौ। तिमी सबै कुरो जानेर गोप्यता निर्वाह गर।

ऋतेन ऋतं नियतमीड आ गोरामा सचा मधुमत्पक्वमग्ने।
कृष्णा सती रुशता धासिनैषा जामर्येण पयसा पीपाय॥९॥

हे अग्निदेव ! हामी सत्ययज्ञसित सम्बद्ध भएर गाईको माग गर्दछौं। गाईले कलिलै उमेरमा पनि मिठो र परिपक्व दुध दिन सक्दछन्। गाई काला भए पनि सेतो र पोषणले युक्त दुध दिएर जनताको पालनपोषण गर्दछन्।

ऋतेन हि ष्मा वृषभश्चिदक्तः पुमाँ अग्निः पयसा पृष्ठ्येन।
अस्पन्दमानो अचरद्वयोधा वृषा शुक्रं दुदुहे पृश्निरूधः॥१०॥

बलशाली र महान् अग्निदेव पोषणयुक्त दुधले सेचन गर्दछन्। अन्नदाता अग्निदेव एक ठाउँमा रहे पनि आफ्ना सामर्थ्यले सबैतिरको यात्रा गर्दछन्। पानी बर्साउने सूर्यदेव आकाशबाट दिव्य रसरूपी प्राणदाता झरीको दोहन गर्दछन्।

ऋतेनाद्रिं व्यसन्भिदन्तः समङ्गिरसो नवन्त गोभिः।
शुनं नरः परि षदन्नुषसमाविः स्वरभवज्जाते अग्नौ॥११॥

अङ्गिराका वंशजले यज्ञको शक्तिबाटै पर्वत नष्ट गरेर शत्रुको बाधा फुकाए र गाई फिर्ता ल्याए। त्यसपछि मानिसले खुसीका साथ उषा प्राप्त गरे। उसै बेला अग्निदेव प्रकट भइदिँदा सूर्यदेव उदाए।

ऋतेन देवीरमृता अमृक्ता अर्णोभिरापो मधुमद्भिरग्ने।
वाजी न सर्गेषु प्रस्तुभानः प्र सदमित्स्रवितवे दधन्युः ॥१२॥

हे अग्निदेव ! कहिल्यै नमर्ने, निरन्तर बगिरहने, मिठो जलरूपी अमृत बोकेका दिव्य झरना लडाईंमा जाने योद्धाको घोडाझैं उत्साहित भएर उर्लंदै निरन्तर रूपमा बग्दछन्।

मा कस्य यक्षं सदमिद्धुरो गा मा वेशस्य प्रमिनतो मापेः।
मा भ्रातुरग्ने अनृजोर्ऋणं वेर्मा सख्युर्दक्षं रिपोर्भुजेम ॥१३॥

हे अग्निदेव ! हिंसा गर्ने स्वभाव भएका कसैका यज्ञमा नजाऊ। पापी बुद्धि भएका छिमेकीका यज्ञमा नजाऊ। हामीलाई छोडेर अन्य दुष्ट दाजुभाइका यज्ञमा नजाऊ र छलकपट गर्ने स्वभाव भएका दाजुभाइले आहुति दिने तिमी आशा नगर। हामी कोही पनि कुनै शत्रु वा मित्रका अधीनमा नपरौं।

रक्षा णो अग्ने तव रक्षणेभी रारक्षाणः सुमख प्रीणानः।
प्रति ष्फुर वि रुज वीड्वंहो जहि रक्षो महि चिद्वावृधानम् ॥१४॥

हे यज्ञरूपी असल अनुहारका अग्निदेव ! हामी सबैको संरक्षक भएर तिमी खुसीसाथ रक्षणसाधनले हाम्रो सुरक्षा गर र सबैलाई तेजस्वी बनाऊ। हाम्रो पाप साह्रै ठूलो भए त्यो पनि नाश गरिदेऊ र निकै बलियो असुर पनि विनाश गर।

एभिर्भव सुमना अग्ने अर्कैरिमान्त्स्पृश मन्मभिः शूर वाजान्।
उत ब्रह्माण्यङ्गिरो जुषस्व सं ते शस्तिर्देववाता जरेत ॥१५॥

हे अग्निदेव ! हामीले पूजा गर्ने स्तोत्रले खुसी होऊ। हे पराक्रमी इन्द्रदेव ! हाम्रो हविष्यान्नरूपी अन्न मननीय स्तोत्रसँगै स्वीकार गर। हे अङ्गिरालाई चिनेका अग्निदेव ! हाम्रो स्तोत्र स्वीकार गर र देवतालाई खुसी गराउने प्रार्थना सुनेर सबल होऊ।

एता विश्वा विदुषे तुभ्यं वेधो नीथान्यग्ने निण्या वचांसि।
निवचना कवये काव्यान्यशंसिषं मतिभिर्विप्र उक्थैः ॥१६॥

हे सृष्टिचक्र चलाउने अग्निदेव ! तिमी विद्वान् र ज्ञानका बलमा संसारको सबै कुरो जान्ने खालका छौ। हामी विप्रहरू तिम्रा लागि फल प्रदान गर्ने, गोप्य, अत्यधिक व्याख्या भएका प्रार्थनाको मन्त्र र स्तो सँगसँगै उच्चारण गर्दछौं।

[सूक्त – ४]

**ऋषि** – वामदेव गौतम। **देवता** – रक्षोहा अग्नि। **छन्द** – त्रिष्टुप्।

कृणुष्व पाजः प्रसितिं न पृथ्वीं याहि राजेवामवाँ इभेन।
तृष्वीमनु प्रसितिं द्रूणानोऽस्तासि विध्य रक्षसस्तपिष्ठैः ॥१॥

हे शत्रु धपाउने अग्निदेव ! बलिया राजाले हात्तीमाथि चढेर राक्षसी वृत्तिका शत्रुमाथि आक्रमण गरेझैं आक्रमण गर। चरा समात्ने आकारको विस्तृत जालले दुष्टलाई विभिन्न किसिमका दुःख दिएर विनाश गर।

तव भ्रमास आशुया पतन्त्यनु स्पृश धृषता शोशुचानः।
तपूंष्यग्ने जुह्वा पतङ्गानसन्दितो वि सृज विष्वगुल्काः ॥२॥

वायुका सम्पर्कले झुल्न लागेको तीव्र गतिको तिम्रा लप्काले असुर भस्म गराओस्। आहुति प्रदान गर्दा तिम्रा दन्केका ज्वालाले असुरलाई भस्म पारोस्। त्यसका लागि आकाशबाट तारा खसेको जस्तो तीव्र गतिमा आफ्ना तेजलाई तिमी प्रेरित गर।

प्रति स्पशो वि सृज तूर्णितमो भवा पायुर्विशो अस्या अदब्धः।
यो नो दूरे अघशंसो यो अन्त्यग्ने माकिष्टे व्यथिरा दधर्षीत् ॥३॥

हे दमनमा नपर्ने अग्निदेव ! नजिक वा टाढा रहेका हाम्रा सबै शत्रुलाई वशमा गर्नका लागि अत्यन्त तेज गतिमा सैनिक पठाइदेऊ। हाम्रा सन्तानको रक्षा गर। कसैले पनि तिम्रा भक्तलाई दुःख दिन नसकोस्।

उदग्ने तिष्ठ प्रत्या तनुष्व न्यमित्राँ ओषतात्तिग्महेते।
यो नो अरातिं समिधान चक्रे नीचा तं धक्ष्यतसं न शुष्कम् ॥४॥

हे अग्निदेव ! तिमी जोसिलो भएर आफ्नो ज्वाला विस्तार गर। तीव्र ज्वालाका प्रभावले शत्रु पूरै

रूपमा भस्म होऊन्। हे ज्योतिर्मय अग्निदेव ! हाम्रो प्रगतिमा बाधक हुनेलाई सुकेको वृक्षझैँ जरैसमेत जलाएर भस्म पारिदेऊ।

**ऊर्ध्वो भव प्रति विध्याध्यस्मदाविष्कृणुष्व दैव्यान्यग्ने।**
**अव स्थिरा तनुहि यातुजूनां जामिमजामिं प्र मृणीहि शत्रून् ॥५॥**

हे अग्निदेव ! तिमी उँभो लाग्ने स्वभावका ज्वालायुक्त भएर हाम्रा शत्रु विध्वंस गर। प्राणीलाई दुःख दिने दुष्टलाई विजयश्रीविहीन बनाऊ र शत्रु बलशाली हुन नदेऊ।

**स ते जानाति सुमतिं यविष्ठ य ईवते ब्रह्मणे गातुमैरत्।**
**विश्वान्यस्मै सुदिनानि रायो द्युम्नान्यर्यो वि दुरो अभि द्यौत् ॥६॥**

हे सधैँका युवा अग्निदेव ! तिमी तीव्र गतिले उँभोतिर जाने र महान् छौ। तिम्रो प्रार्थना गर्ने व्यक्तिको रक्षा गर्दछौ। यज्ञका स्वामी तिमी नै हौ। तिमी असल व्यक्तिका लागि सबै शुभ दिन, ऐश्वर्य र रत्न लिएर उनीहरूका घरअगाडि प्रकट होऊ।

**सेदग्ने अस्तु सुभगः सुदानुर्यस्त्वा नित्येन हविषा य उक्थैः।**
**पिप्रीषति स्व आयुषि दुरोणे विश्वेदस्मै सुदिना सासदिष्टिः ॥७॥**

हे अग्निदेव ! जुन याजक मन्त्र उच्चारण गर्दै आहुति समर्पित गरेर प्रत्येक दिन तिमीलाई सन्तुष्ट गर्ने विचार गर्दछन्, ती सबै असल, सौभाग्यशाली र दानी होऊन्। ज्यादै परिश्रमले पाइने सय वर्षको आयु तिनीहरूले पाऊन्। तिनीहरूका सबै दिन सुखद होऊन् र तिनीहरू यज्ञसम्बन्धी साधनले सम्पन्न पनि होऊन्।

**अर्चामि ते सुमतिं घोष्यर्वाक्सं ते वावाता जरतामियं गीः।**
**स्वश्वास्त्वा सुरथा मर्जयेमास्मे क्षत्राणि धारयेरनु द्यून् ॥८॥**

हे अग्निदेव ! हामी तिम्रा कृपापूर्ण असल बुद्धिको पूजा गर्दछौँ। तिम्रा लागि उच्चारण गरिने कुराले तिम्रै गुणगान गरून्। पुत्रपौत्र, असल अश्व र रथले सम्पन्न भएर हामी तिम्रो प्रार्थना गर्दछौँ। तिमी सधैँभरि नै सम्पूर्ण पोषणकारी शक्तिले सम्पन्न होऊ।

**इह त्वा भूर्या चरेदुप त्मन्दोषावस्तर्दीदिवांसमनु द्यून्।**
**क्रीळन्तस्त्वा सुमनसः सपेमाभि द्युम्ना तस्थिवांसो जनानाम् ॥९॥**

हे अग्निदेव ! तिमी सधैँभरि प्रज्वलित भइरहन्छौ। संसारमा सबैले तिम्रो निकटताको लाभ उठाउँदै सधैँ सेवा गर्दछन्। हामी पनि आफ्ना शत्रुको ऐश्वर्य नियन्त्रित गर्दै उत्साह एवं खुसीका साथ तिम्रो उपासना गर्दछौँ।

**यस्त्वा स्वश्वः सुहिरण्यो अग्न उपयाति वसुमता रथेन।**
**तस्य त्राता भवसि तस्य सखा यस्त आतिथ्यमानुषग्जुजोषत् ॥१०॥**

हे अग्निदेव ! जुन मानिस यज्ञका लागि काम लाग्ने धनऐश्वर्यले सम्पन्न र असल घोडा जोडेका सुनौला रथबाट तिमीकहाँ पुग्दछन् र त्यसका साथै जो अतिथिको जस्तै स्वागत सत्कार गर्दछन् तिनलाई असल मित्रले झैँ तिमी सुरक्षा गर्दछौ।

**महो रुजामि बन्धुता वचोभिस्तन्मा पितुर्गोतमादन्वियाय।**
**त्वं नो अस्य वचसश्चिकिद्धि होतर्यविष्ठ सुक्रतो दमूनाः ॥११॥**

हे सत्कर्ममा लागेका युवा होताजस्ता अग्निदेव ! तिमीलाई स्तुति गर्दै हामीले आफन्तको भावना कमाएका छौँ। सबैभन्दा ठूलो आसुरी शक्ति नष्ट गर। स्तोत्ररूपी वचन हामीले आफ्ना पिता गौतम ऋषिबाट प्राप्त गरेका थियौँ। हे शत्रु दमन गर्ने अग्निदेव ! हाम्रो प्रार्थना सुन।

**अस्वप्नजस्तरणयः सुशेवा अतन्द्रासोऽवृका अश्रमिष्ठाः।**
**ते पायवः सध्र्यञ्चो निषद्याग्ने तव नः पान्त्वमूर ॥१२॥**

हे सबै कुराको ज्ञान भएका अग्निदेव ! तिम्रो किरण सधैँभरि जागृत रहने, द्रुतगामी, खुसी प्रदान गर्ने, अल्छ्याइँ हटाउने, हिंसा नगर्ने, नथाक्ने, मिलेर रहने र सुरक्षा गर्ने खालको छ। यस यज्ञमा आएर त्यसले हाम्रो सुरक्षा गरोस्।

**ये पायवो मामतेयं ते अग्ने पश्यन्तो अन्धं दुरितादरक्षन्।**
**ररक्ष तान्त्सुकृतो विश्ववेदा दिप्सन्त इद्रिपवो नाह देभुः ॥१३॥**

हे सर्वज्ञ अग्निदेव ! तिम्रा रक्षक किरणले कृपा गरेर ममताका अन्धा पुत्रलाई पापबाट जोगाएको

थियो। तिमीले उनका सबै पुण्य सुरक्षा गरेका थियौ। हानी पुऱ्याएर पराजित गराउने विचार गर्ने शत्रु तिम्रै कारणले सफल हुन सकेनन्।

**त्वया वयं सधन्य१स्त्वोतास्तव प्रणीत्यश्याम वाजान्।**
**उभा शंसा सूदय सत्यताते ऽनुष्ठुया कृणुह्यह्रयाण ॥१४॥**

यज्ञस्थलमा दुक्कसँग पुग्ने गरेका हे अग्निदेव ! हामी याजक तिम्रा कृपाले, तिमीबाटै संरक्षित भएर र तिमीबाटै निर्देशित मार्गमा हिंडेर धनधान्य लाभ गरौं। हे सत्य विस्तार गराउने अग्निदेव ! नजिक र टाढा रहेका शत्रु विनाश गरेर क्रमैंसित कार्य पूरा गर।

**अया ते अग्ने समिधा विधेम प्रति स्तोमं शस्यमानं गृभाय।**
**दहाशसो रक्षसः पाह्य१स्मान्द्रुहो निदो मित्रमहो अवद्यात् ॥१५॥**

हे अग्निदेव ! समिधाले तिमीलाई हामी प्रज्वलित गराउँछौं। हाम्रो स्तुति तिमी स्वीकार गर र स्तुतिरहित असुर विनाश गर। मित्रजस्तै वन्दनीय हे अग्निदेव ! तिमी शत्रु, निन्दक र विरोधीबाट हाम्रो रक्षा गर।

## [सूक्त - ५]

**ऋषि** - वामदेव गौतम। **देवता** - वैश्वानर अग्नि। **छन्द** - त्रिष्टुप्।

**वैश्वानराय मीळ्हुषे सजोषाः कथा दाशेमाग्नये बृहद्भाः।**
**अनूनेन बृहता वक्षथेनोप स्तभायदुपमिन्न रोधः ॥१॥**

जुनसुकै खालका प्राणीमा समान भाव राख्ने हामी याजक सुखदायी र तेजस्वी वैश्वानर अग्निदेवका निम्ति कसरी आहुति प्रदान गरौं ? खम्बाले छानो थामेझैं अग्निदेव आफ्ना अत्यन्त विशाल शरीरले सम्पूर्ण संसार थाम्दछन्।

**मा निन्दत य इमां मह्यं रातिं देवो ददौ मर्त्याय स्वधावान्।**
**पाकाय गृत्सो अमृतो विचेता वैश्वानरो नृतमो यह्वो अग्निः ॥२॥**

हे होताहरू हो ! आहुतिले सन्तुष्ट भएर, ज्ञानी र मरणशील हामी याजकलाई ऐश्वर्य प्रदान गर्ने वैश्वानर अग्निदेवको आलोचना नगर। अग्निदेव मेधावान्, अविनाशी र बुद्धिमान् छन्। उनी अत्यन्त महान् नेता र महिमाशाली छन्।

**साम द्विबर्हा महि तिग्मभृष्टिः सहस्ररेता वृषभस्तुविष्मान्।**
**पदं न गोरपगूळ्हं विविद्वानग्निर्मह्यं प्रेदु वोचन्मनीषाम् ॥३॥**

अग्निदेव दुवै लोकमा आफ्ना ज्वाला व्याप्त गर्ने, तीखो ओजयुक्त, सहस्रौं किसिमका सामर्थ्य भएका, अत्यन्त शौर्यवान् र साहसी छन्। गाईको खुरझैं उनी रहस्यमय छन्। विद्वान्का सहयोगले हामी उनको जानकारी प्राप्त गरौं।

**प्रतौं अग्निर्बभसत्तिग्मजम्भस्तपिष्ठेन शोचिषा यः सुराधाः।**
**प्र ये मिनन्ति वरुणस्य धाम प्रिया मित्रस्य चेततो ध्रुवाणि ॥४॥**

ज्ञानी मित्रदेव र वरुणदेवका प्रियपात्रको विनाश गर्ने व्यक्तिलाई असल धनले सम्पन्न र तिखा दाँत भएका अग्निदेव आफ्नै तेजले भस्म बनाइदिन्छन्।

**अभ्रातरो न योषणो व्यन्तः पतिरिपो न जनयो दुरेवाः।**
**पापासः सन्तो अनृता असत्या इदं पदमजनता गभीरम् ॥५॥**

दाजुभाइविनाकी तर पतिसँग झगडा गर्ने स्त्रीले जस्तो दुःख पाउँछन् उसै किसिमले सत्यविहीन यज्ञको अनुष्ठान नगर्ने र अग्निसित रिसाउने असत्यवादी पापी व्यक्तिले नरकको जस्तै अवस्था सिर्जना गर्दछन्।

**इदं मे अग्ने कियते पावकामिनते गुरुं भारं न मन्म।**
**बृहद्दधाथ धृषता गभीरं यह्वं पृष्ठं प्रयसा सप्तधातु ॥६॥**

सबैलाई पवित्रता प्रदान गर्ने हे अग्निदेव ! उदार मन भएका मानिसले थोरै माग्नेलाई पनि मनग्गे प्रदान गर्दछन्। तिमी अहिंसक, शत्रु परास्त गर्न सक्ने, बलयुक्त, गम्भीर र महान् आश्रय प्रदान गर्ने हौ, मलाई सातै धातुले सम्पन्न मनग्गे ऐश्वर्य प्रदान गर।

तमिन्वेश्व समना समानमभि क्रत्वा पुनती धीतिरश्याः ।
ससस्य चर्मन्नधि चारु पृश्नेरग्रे रुप आरुपितं जबारु ॥७॥

प्रजापतिले अनेकौं रूपरङ्गका सारा पदार्थ उत्पन्न गर्ने धर्तीमा द्रुतगामी वैश्वानरदेवलाई विचरण गर्नका लागि प्रेरित गरे। यज्ञ आदि सत्कर्म गर्ने समयभन्दा पहिले नै हामीले मन लगाएर गरेको पवित्र प्रार्थना उनै समदर्शी वैश्वानरलाई प्राप्त हुन्छ।

प्रवाच्यं वचसः किं मे अस्य गुहा हितमुप निणिग्वदन्ति ।
यदुस्रियाणामप वारिवा व्रन्पाति प्रियं रुपो अग्रं पदं वेः ॥८॥

पानी उचाएझैं गोठालाले गाईबाट दुध दुहुन्छ, त्यो दुध वैश्वानरले गुफामा लुकाएर राखेका हुन्छन् भन्ने विद्वान्हरूको भनाइ छ। उनले विस्तृत धर्तीका प्रिय र उत्तम ठाउँको सुरक्षा गर्दछन्। हाम्रो यस भनाइमा अनुचित कुरो के छ र ?

इदमु त्यन्महि महामनीकं यदुस्रिया सचत पूर्व्यं गौः ।
ऋतस्य पदे अधि दीद्यानं गुहा रघुष्यद्रघुयद्विवेद ॥९॥

अग्निदेवलाई दुध प्रदान गर्ने गाई यज्ञ आदि कर्ममा सहायक हुन्छन्। स्वयं आलोकवान् अग्नि गुफामा निवास गर्दछन् र तीव्र वेगले यात्रा गर्दछन्। सूर्यमण्डलमा व्याप्त त्यस्ता वन्दनीय वैश्वानरदेवका विषयमा हामी जान्दछौं।

अध द्युतानः पित्रोः सचासामनुत गुह्यं चारु पृश्नेः ।
मातुष्पदे परमे अन्ति षद्गोर्वृष्णः शोचिषः प्रयतस्य जिह्वा ॥१०॥

मातापिताजस्ता द्यावापृथिवीका माझमा झुल्किने सूर्यदेव गाईका पवित्र दुध मुखैले पिउँछन्। बलशाली, तेजयुक्त र प्रयत्नशील वैश्वानरको जिब्रो माताजस्ता गाईका उत्कृष्ट थुनमा रहँदा उनी दुध खाने इच्छा गर्दछन्।

ऋतं वोचे नमसा पृच्छ्यमानस्तवाशसा जातवेदो यदीदम् ।
त्वमस्य क्षयसि यद्ध विश्वं दिवि यदु द्रविणं यत्पृथिव्याम् ॥११॥

कसैले सोधेमा हामी यजमानहरू नमस्कार गर्दै हे अग्निदेव ! तिम्रा कृपाले जेजति प्राप्त भएको छ, त्यसको अधिपति तिमी नै हौ, द्यावापृथिवीमा विद्यमान समस्त ऐश्वर्यका अधिपति पनि तिमी नै हौ भन्ने सत्य कुरो निवेदन गरौंला।

किं नो अस्य द्रविणं कद्ध रत्नं वि नो वोचो जातवेदश्चिकित्वान् ।
गुहाध्वनः परमं यन्नो अस्य रेकु पदं न निदाना अगन्म ॥१२॥

हे संसारलाई नै जान्ने अग्निदेव ! यस सम्पत्तिमा हामीलाई उपयुक्त हुने खालको कुन ऐश्वर्य र रत्न होला भन्ने कुरो तिमी बताऊ। तिमी सर्वज्ञ हुनाले गुफामा भएको हाम्रा लागि उपयुक्त ऐश्वर्य प्राप्त गर्ने भरोसिलो मार्ग देखाऊ। लक्ष्य पूर्ति गर्न नसकेर निन्दित हुँदै हामी आफ्नो घरतिर फिर्ता हुन नपरोस्।

का मर्यादा वयुना कद्ध वाममच्छा गमेम रघवो न वाजम् ।
कदा नो देवीरमृतस्य पत्नीः सूरो वर्णेन ततनन्नुषासः ॥१३॥

धन प्राप्त गर्ने सीमा कति हो ? त्यसको रमाइलो बाटो के हो ? द्रुतगामी अश्व लडाईंतिर गएझैं हामी सबै ऐश्वर्यतिर जान्छौं। अविनाशी आदित्यदेवका तेजस्वी पत्नी उषाहरू आफ्ना द्युलोकमा हाम्रा निम्ति कहिले प्रकट होलान् ?

अनिरेण वचसा फल्ग्वेन प्रतीत्येन कृधुनातृपासः ।
अधा ते अग्ने किमिहा वदन्त्यनायुधास आसता सचन्ताम् ॥१४॥

हे अग्निदेव ! रुखो, अस्पष्ट, कठोर र अशुद्ध बोली भएका असन्तोषी मानिसले यस यज्ञमा के प्रार्थना गर्दछ ? शौर्य एवं आयुधविनाका मानिसले दुःख पाउँछन्।

अस्य श्रिये समिधानस्य वृष्णो वसोरनीकं दम आ रुरोच ।
रुशद्वसानः सुदृशीकरूपः क्षितिर्न राया पुरुवारो अद्यौत् ॥१५॥

प्रज्वलित, बलशाली र सबैलाई निवास प्रदान गर्ने अग्निदेवको तेज यजमानको हितका लागि यज्ञमण्डपमा सधैं नै आलोकित हुन्छ। शुभ्र र तेजस्वी पहिरनले रूप मनोहर छ। अनेकौंबाट बोलाइने धन र मान पाएको राजकर्मचारीझैं उनी प्रफुल्ल छन्।

[सूक्त - ६]

ऋषि - वामदेव गौतम। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

ऊर्ध्व ऊ षु णो अध्वरस्य होतरग्ने तिष्ठ देवताता यजीयान्।
त्वं हि विश्वमभ्यसि मन्म प्र वेधसश्चित्तिरसि मनीषाम् ॥१॥

हे यज्ञसम्पादन गराउने अग्निदेव ! सबैभन्दा ठूला याज्ञिक तिमी नै हौ। त्यसैले अरू याजकभन्दा माथिल्लो स्थानमा विराजमान छौ। तिमीले नै हाम्रो स्तुति सुन्दछौ। तिमी विद्वान् याजकहरूको बौद्धिक क्षमता बढाउँछौ।

अमूरो होता न्यसादि विक्ष्वग्निर्मन्द्रो विदथेषु प्रचेताः।
ऊर्ध्वं भानुं सवितेवाश्रेन्मेतेव धूमं स्तभायदुप द्याम् ॥२॥

ज्ञानवान्, यज्ञसम्पादक, हर्षप्रदायक र मेधावी अग्निदेव यज्ञमा याजकहरूका बीचमा प्रतिष्ठित भएर सुशोभित छन्। आदित्यले जस्तै आफ्नो रश्मि माथितिर गराउँछन् र खम्बाजस्तो धुवाँ द्युलोकमाथि ठड्याउँछन्।

यता सुजूर्णी रातिनी घृताची प्रदक्षिणिद् देवतातिमुराणः।
उदु स्वरुर्नवजा नाक्रः पश्वो अनक्ति सुधितः सुमेकः ॥३॥

याजकहरूले घिउले भरिएको पुरानो सुरो हातमा लिएका छन्। यज्ञ अघि बढाउने अध्वर्युहरू यज्ञका चारैतिर प्रदक्षिणा गर्दछन् र नयाँ बनाएको मौलो सोझै ठडिएको छ। आक्रामक, प्रदीप्त, सर्वदर्शी र श्रेष्ठ प्रतिभाशाली अग्निदेव प्रज्वलित भइरहेका छन्।

स्तीर्णे बर्हिषि समिधाने अग्ना ऊर्ध्वो अध्वर्युर्जुजुषाणो अस्थात्।
पर्यग्निः पशुपा न होता त्रिविष्ट्येति प्रदिव उराणः ॥४॥

कुशका आसन ओछ्याएपछि र अग्नि प्रज्वलित भएपछि याजकहरू देवतालाई खुसी पार्नका लागि उभिन्छन्। यज्ञका सम्पादक, तेजस्वी र महान् गुणले सम्पन्न अग्निदेव चढाएको आहुति धेरै बनाउँदै तीनै लोकमा पुऱ्याउँदै सबैलाई पालन गर्दछन्।

परि त्मना मितद्रुरेति होताग्निर्मन्द्रो मधुवचा ऋतावा।
द्रवन्त्यस्य वाजिनो न शोका भयन्ते विश्वा भुवना यदभ्राट् ॥५॥

देवतालाई आह्वान गर्ने, सबैलाई हर्ष प्रदान गर्ने र मधुर ध्वनि भएका यज्ञका अग्निदेव सामान्य गतिले चारैतिर घुम्दछन्। उनको रश्मि वेगवान् अश्वझैं चारैतिर कुद्छ र उनी प्रज्वलित भएपछि दुनियाँ उनीदेखि डराउन थाल्दछ।

भद्रा ते अग्ने स्वनीक सन्दृग्घोरस्य सतो विषुणस्य चारुः।
न यत्ते शोचिस्तमसा वरन्त न ध्वस्मानस्तन्वी३ रेप आ धुः ॥६॥

उत्तम ज्वाला भएका हे अग्निदेव ! तिमी शत्रुलाई भयभीत गर्दै सबै ठाउँमा विद्यमान रहन्छौ। तिम्रो श्रेष्ठ र हितकारी छवि राम्रो देखिन्छ। रातका अन्धकारले तिम्रो आलोक छोपिँदैन। आसुरी वृत्तिका दुष्टले तिम्रा शरीरमा पापको स्थापना गर्न सक्दैन।

न यस्य सातुर्जनितोरवारि न मातरापितरा नू चिदिष्टौ।
अधा मित्रो न सुधितः पावकोऽग्निर्दीदाय मानुषीषु विक्षु ॥७॥

सबै कुरा उत्पन्न गराउने हे अग्निदेव ! तिम्रो दान कसैले रोक्न सक्दैन। मातापितारूपी द्युलोक र भूलोकले पनि तिम्रो रहर तत्कालै पूरा गर्न सक्दैनन्। तिमी ज्ञानवान् भएर शुद्ध गराउँछौ। तिमी सज्जनका माझमा परम हितैषि मित्रजस्तै प्रकाशित छौ।

द्विर्यं पञ्च जीजनन्त्संवसानाः स्वसारो अग्निं मानुषीषु विक्षु।
उषर्बुधमथर्यो३ न दन्तं शुक्रं स्वासं परशुं न तिग्मम् ॥८॥

दिदीबहिनीजस्ता दस औँलाले अग्निदेवलाई अरणी मन्थन गरेर प्रकट गर्दछन्। अग्निदेव बिहानी जाग्ने, आहुति ग्रहण गर्ने र तेजयुक्त सुन्दर शरीर भएका छन्। धारिलो फर्साजस्तो भएर उनी विरोधी असुरलाई संहार गर्दछन्।

तव त्ये अग्ने हरितो घृतस्ना रोहितास ऋज्वञ्चः स्वञ्चः।
अरुषासो वृषण ऋजुमुष्का आ देवतातिमह्वन्त दस्माः ॥९॥

हे अग्निदेव ! तिम्रा घोडालाई यज्ञमा बोलाउँछौ। राता रङ्गको, असल गति भएको, आलोक विस्तृत गर्ने, सुगठित शरीरको, बल बढाउने र युवा घोडा हेर्नमा राम्रो छ।

ये ह त्ये ते सहमाना अयासस्त्वेषासो अग्ने अर्चयश्चरन्ति।
श्येनासो न दुवसनासो अर्थं तुविष्वणसो मारुतं न शर्धः ॥१०॥

हे अग्निदेव ! तिमीसित शत्रु परास्त गराउने, प्रकाशित हुने, गतिशील र वन्दनीय किरण छ। अश्वझैँ खटाएको ठाउँमा जान्छ र मरुत्‌हरूको जस्तै अत्यन्त शब्द गर्दछ।

अकारि ब्रह्म समिधान तुभ्यं शंसात्युक्थं यजते व्यू धाः।
होतारमग्निं मनुषो नि षेदुर्नमस्यन्त उशिजः शंसमायोः ॥११॥

हे प्रज्वलित अग्निदेव ! तिम्रा लागि हामी याजकले स्तोत्र रचना गरेका छौँ। हामी स्तोत्र उच्चारण गर्दै यज्ञ गर्दछौँ, तिमी ग्रहण गर। प्रार्थनीय होताका रूपमा यजमानले अग्निदेवको पूजा गर्दछन् र असल ऐश्वर्यको आशाले याजकहरू यज्ञस्थलमा बस्छन्।

[सूक्त - ७]

ऋषि - वामदेव गौतम। देवता - अग्नि। छन्द - जगती अनुष्टुप्।

अयमिह प्रथमो धायि धातृभिर्होता यजिष्ठो अध्वरेष्वीड्यः।
यमप्नवानो भृगवो विरुरुचुर्वनेषु चित्रं विभ्वं विशेविशे ॥१॥

देवता बोलाइदिने, यज्ञीय कर्म निर्वाह गर्ने अग्निदेवले यज्ञमा ऋत्विक्‌हरूको प्रशंसनीय स्तुति प्राप्त गर्दछन्। यज्ञको कार्य गर्न यस यज्ञवेदीमा उनलाई स्थापित गरेका छन्। यजमानको उन्नतिका लागि भृगुवंशी ऋषिले विलक्षण एवं विस्तृत कर्मका सम्पादक अग्निदेवलाई वनमा प्रज्वलित गरेका थिए।

अग्ने कदा त आनुषग्भुवद्देवस्य चेतनम्।
अधा हि त्वा जगृभ्रिरे मर्तासो विक्ष्वीड्यम् ॥२॥

हे मानिसका प्रार्थनीय र आलोकसम्पन्न अग्निदेव ! सबै मानिसले तिमीलाई जीवन प्रदाताका रूपमा स्वीकार गर्दछन्। तिम्रो आलोक सबैतिर कहिले विस्तृत होला ?

ऋतावानं विचेतसं पश्यन्तो द्यामिव स्तृभिः।
विश्वेषामध्वराणां हस्कर्तारं दमेदमे ॥३॥

ज्ञानले युक्त र मायारहित अग्निदेव समस्त यज्ञ आलोकित गराउँछन्। नक्षत्रबाट द्युलोक सुन्दर देखिएझैँ तिमी मानिसको यज्ञशाला सुशोभित गराउँछौ।

आशुं दूतं विवस्वतो विश्वा यश्चर्षणीरभि।
आ जभ्रुः केतुमायवो भृगवाणं विशेविशे ॥४॥

द्रुतगामी, याजकका सन्देशवाहक, ध्वजास्वरूप, तेजोमय र आफ्ना विशेषताले सबैको उपकार गर्ने हुनाले अग्निदेवलाई मानिसले आआफ्ना घरमा प्रतिष्ठित गर्दछन्।

तमीं होतारमानुषक्चिकित्वांसं नि षेदिरे।
रण्वं पावकशोचिषं यजिष्ठं सप्त धामभिः ॥५॥

यज्ञसम्पादक, ज्ञानवान्, मनोहर, पवित्र दीप्तिसम्पन्न, होताहरूमा सर्वश्रेष्ठ र सात रङ्गका किरणले सम्पन्न अग्निदेवलाई यजमानहरूले उपयुक्त स्थानमा स्थापित गरे।

तं शश्वतीषु मातृषु वन आ वीतमश्रितम्।
चित्रं सन्तं गुहा हितं सुवेदं कूचिदर्थिनम् ॥६॥

अद्‌भुत ज्ञान भएका अग्निदेवलाई याजकहरूले प्रतिष्ठित गरे। उनी जल र वृक्षका समूहमा विद्यमान रहने, गुफामा रहने, आहुति ग्रहण गर्ने र सुन्दर भए पनि नजिकै राख्न सकिने खालका छैनन्।

ससस्य यद्वियुता सस्मिन्नूधन्नृतस्य धामन्रणयन्त देवाः।
महाँ अग्निर्नमसा रातहव्यो वेरध्वराय सदमिदृतावा ॥७॥

साधकहरूले नित्य नमस्कारपूर्वक सम्पन्न गर्ने यज्ञलाई अग्निदेव जान्दछन्। उनी श्रेष्ठ, सत्यवान् भएर आहुति ग्रहण गर्दछन्। याजकहरू बिहानीको निद्रा त्यागेर यज्ञ आदि असल कर्म गर्दै उनै अग्निदेवलाई खुसी पार्दछन्।

वेरध्वरस्य दूत्यानि विद्वानुभे अन्ता रोदसी सञ्चिकित्वान्।
दूत ईयसे प्रदिव उराणो विदुष्टरो दिव आरोधनानि ॥८॥

हे विद्वान् अग्निदेव ! तिमी यज्ञका दूतको काम जान्दछौ र द्यावापृथिवीका बीचमा विद्यमान आकाशलाई पनि जान्दछौ। तिमी अत्यन्त प्राचीन, सबैलाई समृद्ध गर्ने शत्रुबाट पराजित नहुने र देवताका सन्देशवाहक हौ। तिमी दिव्यलोकभन्दा पनि माथिसम्म जान्छौ।

कृष्णं त एम रुशतः पुरो भाश्चरिष्ण्वर्चिर्वपुषामिदेकम्।
यदप्रवीता दधते ह गर्भं सद्यश्चिज्जातो भवसीदु दूतः ॥९॥

हे तेजसम्पन्न अग्निदेव ! तिम्रो रथ कालो रङ्गको छ र तिम्रो प्रभा श्रेष्ठ छ। तिम्रो यात्रा गरिरहेको तेज तेजस्वी पदार्थमा सर्वश्रेष्ठ छ। अरणीका बीचबाट उत्पन्न भएपछि तिमी यजमानको सन्देशवाहक हुन्छौ।

सद्यो जातस्य ददृशानमोजो यदस्य वातो अनुवाति शोचिः।
वृणक्ति तिग्मामतसेषु जिह्वां स्थिरा चिदन्ना दयते वि जम्भैः ॥१०॥

अरणीमन्थन गरेपछि अग्निदेवको तेज उत्पन्न हुन लागेको देखा पर्न थाल्दछ। अग्निका लप्कालाई लक्ष्य बनाएर हावा चल्दा काठका डङ्गुरमा आफ्नो तिखो लप्को मिसिन पुग्दछ र अत्यन्त कडा अन्नरूपी काठ पनि आफ्ना तिखा दाँतले खाइदिन्छन्।

तृषु यदन्ना तृषुणा ववक्ष तृषुं दूतं कृणुते यह्वो अग्निः।
वातस्य मेळिं सचते निजूर्वन्नाशुं न वाजयते हिन्वे अर्वा ॥११॥

अग्निदेव आफ्ना द्रुतगामी किरणले अन्नरूपी काठ तत्काल भस्मीभूत गराउँछन्। त्यसपछि उनले आफूलाई सन्देशवाहक बनाउँछन्। समिधा जलाएर उनी वायुप्रवाहमा मिसिन्छन्। घोडा चढ्नेले घोडा बलियो बनाएझैं अग्निदेव आफ्नो लप्का तेजस्वी बनाउँदै सबैलाई प्रेरणा दिन्छन्।

[सूक्त - ८]

ऋषि - वामदेव गौतम। देवता - अग्नि। छन्द - गायत्री।

दूतं वो विश्ववेदसं हव्यवाहममर्त्यम्। यजिष्ठमृञ्जसे गिरा ॥१॥

सम्पूर्ण ज्ञानले सम्पन्न हे अग्निदेव ! तिमी हविवाहक हौ। समस्त देवशक्तिका प्रतिनिधि तिमी यज्ञका साधनरूप हौ। तिमीसित हामी स्तुतिका माध्यमबाट अनुकूल भइदिन प्रार्थना गर्दछौं। तिमी सधैं कृपावान् भइराख।

स हि वेदा वसुधितिं महाँ आरोधनं दिवः। स देवाँ एह वक्षति ॥२॥

महिमाशाली अग्निदेव समस्त ऐश्वर्यका ज्ञाता हुन्। उनी दिव्यलोकको श्रेष्ठतम स्थान पनि जान्दछन्। त्यसैले इन्द्र आदि सबै देवतालाई हाम्रा यस यज्ञमा आह्वान गरून्।

स वेद देव आनमं देवाँ ऋतायते दमे। दाति प्रियाणि चिद्वसु ॥३॥

आलोकसम्पन्न अग्निदेव इन्द्र आदि देवतालाई नमस्कार र वन्दना आदि गर्ने विधि जान्दछन्। यज्ञको कामना गर्नेलाई उनी यज्ञ मण्डपमा अभीष्ट प्रदान गर्दछन्।

स होता सेदु दूत्यं चिकित्वाँ अन्तरीयते। विद्वाँ आरोधनं दिवः ॥४॥

याजकबाट लिएको हव्य देवतासम्म पुऱ्याउने होतारूपी अग्निदेव दूतको कार्य राम्ररी जान्दछन्। उनी स्वर्गलोकको आरोहणयोग्य स्थान पनि जान्दछन् र सबै ठाउँमा विद्यमान रहन्छन्।

ते स्याम ये अग्नये ददाशुर्हव्यदातिभिः। य ईं पुष्यन्त इन्धते ॥५॥

आहुति प्रदान गरेर खुसी पार्ने याजक अग्निदेवलाई समिधाले प्रज्वलित गराउँदै समृद्ध पार्दछन्। ती याजकले झैं हामी यज्ञ आदि असल कर्म गर्दै अग्निदेवलाई प्रसन्न गरौं।

ते राया ते सुवीर्यैः ससवांसो वि शृण्विरे। ये अग्ना दधिरे दुवः ॥६॥

आहुति प्रदान गरेर अग्निदेवको सेवा गर्ने याजकहरू सबै खालका ऐश्वर्यले सम्पन्न भएर प्रसिद्धि प्राप्त गर्दछन्। ती याजकहरू शक्तिशाली पुत्र आदिले पनि सम्पन्न हुन्छन्।

अस्मे रायो दिवेदिवे सं चरन्तु पुरुस्पृहः। अस्मे वाजास ईरताम् ॥७॥

हामीले रहर गरेर खोजिएको ऐश्वर्य सधैं हामीकहाँ आओस्। अग्निदेवले हाम्रा यज्ञमा विभिन्न प्रकारका धनधान्य प्रदान गरून्।

स विप्रश्चर्षणीनां शवसा मानुषाणाम्। अति क्षिप्रेव विध्यति ॥८॥
मेधावी अग्निदेव आफ्ना सामर्थ्यले मानिसको कष्ट द्रुतगामी बाणजस्तै तीव्र प्रहार गरेर पूरै नष्ट गरिदिन्छन्।

[सूक्त - ९]

ऋषि – वामदेव गौतम। देवता – अग्नि। छन्द – गायत्री।

अग्ने मृड महाँ असि य ईमा देवयुं जनम्। इयेथ बर्हिरासदम् ॥१॥
हे अग्निदेव ! उपासकलाई समृद्ध र सुखी बनाऊ। तिमी सामर्थ्यवान् र महान् छौ। उपासक यजमानका नजिकै पवित्र कुशका आसनमा बस्न आऊ।

स मानुषीषु दूडभो विक्षु प्रावीरमर्त्यः। दूतो विश्वेषां भुवत् ॥२॥
असुरले गरेका प्रहारले जसलाई नष्ट गर्न सक्दैन, मनुष्यलोकमा स्वतन्त्र विचरण गर्ने ती अविनाशी अग्निदेव सम्पूर्ण देवताका दूत हुन्।

स सद्म परि णीयते होता मन्द्रो दिविष्टिषु। उत पोता नि षीदति ॥३॥
अग्निदेवलाई यज्ञमण्डपमा चारैतिर लान्छन्। सोमयज्ञमा प्रार्थनीय अग्निदेव यज्ञका सम्पादक, होता र परिशोधकका रूपमा विराजमान हुन्छन्।

उत ग्ना अग्निरध्वर उतो गृहपतिर्दमे। उत ब्रह्मा नि षीदति ॥४॥
अग्निदेव प्रार्थनीय र यज्ञ आदि कर्म सम्पन्न गराउने होताका रूप हुन्। उनी यज्ञका मण्डपमा गृहस्वामी र ब्रह्माका रूपमा विद्यमान हुन्छन्।

वेषि ह्यध्वरीयतामुपवक्ता जनानाम्। हव्या च मानुषाणाम् ॥५॥
हे अग्निदेव ! तिमी यज्ञमा याजकहरूले दिने आहुतिको अभिलाषा गर्दछौ र असल प्रेरणा प्रदान गर्दछौ।

वेषीद्वस्य दूत्यं१ यस्य जुजोषो अध्वरम्। हव्यं मर्तस्य वोढवे ॥६॥
हे अग्निदेव ! आहुति ग्रहण गर्नका लागि तिमी जुन याजकको यज्ञ स्वीकार गर्दछौ, उसको हव्य देवताकहाँ पुऱ्याएर दूतको रूपमा काम गर्दछौ।

अस्माकं जोष्यध्वरमस्माकं यज्ञमङ्गिरः। अस्माकं शृणुधी हवम् ॥७॥
अङ्गिरारूप हे अग्निदेव ! हाम्रा यज्ञमा हव्य ग्रहण गर र हाम्रो स्तुति सुन।

परि ते दूडभो रथोऽस्माँ अश्नोतु विश्वतः। येन रक्षसि दाशुषः ॥८॥
कसैबाट पनि प्रभावित नहुने तिम्रो त्यो रथ, जसबाट तिमी दान दिनेहरूको रक्षा गर्दछौ, उसैबाट हामी सबैलाई चारै तिरबाट राम्ररी रक्षा गर।

[सूक्त - १०]

ऋषि – वामदेव गौतम। देवता – अग्नि। छन्द – पदपङ्क्ति उष्णिक्।

अग्ने तमद्याश्वं न स्तोमैः क्रतुं न भद्रं हृदिस्पृशम्। ऋध्यामा त ओहैः ॥१॥
हे अग्निदेव ! हामी याजकहरू आज यज्ञ र अश्वजस्तै गतिशील तिम्रो यश बढाउनका लागि ओह नामका हृदयस्पर्शी स्तोत्र प्रयोग गर्दछौं।

अधा ह्यग्ने क्रतोर्भद्रस्य दक्षस्य साधोः। रथीर्ऋतस्य बृहतो बभूथ ॥२॥
हे कल्याणकारी, बलवर्द्धक, अभीष्ट प्रदान गर्ने र सत्यस्वरूप अग्निदेव ! तिमी महान् छौ र हाम्रो यज्ञका मुख्य आधार हौ।

एभिर्नो अर्कैर्भवा नो अर्वाङ्स्व१र्ण ज्योतिः। अग्ने विश्वेभिः सुमना अनीकैः ॥
हे अग्निदेव ! सूर्यजस्तै तेजस्वी, असल विचारका तिमी पूज्य इन्द्र आदि देवताका साथ हाम्रा यज्ञमा आऊ।

आभिष्टे अद्य गीर्भिर्गृणन्तोऽग्ने दाशेम। प्र ते दिवो न स्तनयन्ति शुष्माः ॥४॥
हे अग्निदेव ! आज हामी असल स्तोत्र उच्चारण गर्दै तिम्रो प्रार्थना गर्दछौं। तिमीलाई हामी आहुति प्रदान गर्दछौं। तिम्रो तेजस्वी लप्काले मेघजस्तै ध्वनि गर्दछ।

तव स्वादिष्ठाग्ने संदृष्टिरिदा चिदह्न इदा चिदक्तोः।
श्रिये रुक्मो न रोचत उपाके ॥५॥

हे अग्निदेव ! तिम्रो प्रीतियुक्त प्रभा आभूषणजस्तो छ। सबै पदार्थलाई आश्रय दिनका लागि त्यो प्रभा रातदिन सुशोभित भइरहन्छ।

घृतं न पूतं तनूररेपाः शुचि हिरण्यम्। तत्ते रुक्मो न रोचत स्वधावः ॥६॥

हे अन्नसम्पन्न अग्निदेव ! तिम्रो स्वरूप शुद्ध घिउजस्तै पापरहित छ। तिम्रो मनोहर तेज सुनको गहनाजस्तै आलोकवान् छ।

कृतं चिद्धि ष्मा सनेमि द्वेषोऽग्न इनोषि मर्तात्। इत्था यजमानादृतावः ॥७॥

हे सत्यसम्पन्न अग्निदेव ! यज्ञ गर्ने मानिसको धेरै पुरानो पाप तिमी मेटाइदिन्छौ।

शिवा नः सख्या सन्तु भ्रात्राग्ने देवेषु युष्मे। सा नो नाभिः सदने सस्मिन्नूधन् ॥

हे अग्निदेव ! देवता, हामी र तिम्रा बीचको मित्रता एवं बन्धुत्वको भावना हितकारी होस्। त्यस मित्रताले यज्ञ आदि असल कर्मका रूपमा भलो गरोस्।

[सूक्त - ११]

ऋषि - वामदेव गौतम। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

भद्रं ते अग्ने सहसिन्ननीकमुपाक आ रोचते सूर्यस्य।
रुशद्दृशे ददृशे नक्तया चिदरूक्षितं दृश आ रूपे अन्नम् ॥१॥

हे बलशाली, सौन्दर्यवान् अग्निदेव ! तिम्रो हितकारी तेज दिउँसो पनि चारैतिर आलोकित हुन्छ र हेर्नका लागि अत्यन्त रमाइलो हुन्छ, राति पनि त्यस्तै देखिन्छ। चिल्लो घिउ हव्यका रूपमा तिमीलाई समर्पित गरिन्छ।

वि षाह्यग्ने गृणते मनीषां खं वेपसा तुविजात स्तवानः।
विश्वेभिर्यद्वावनः शुक्र देवैस्तन्नो रास्व सुमहो भूरि मन्म ॥२॥

हे विभिन्न रूपमा प्रकट हुने अग्निदेव ! यज्ञ आदि कर्मसँग प्रार्थना गर्नेहरूबाट तिमी प्रशंसित भएर उनीहरूका लागि स्वर्गको द्वार खोलिदिन्छौ। असल तेजले सम्पन्न हे अग्निदेव ! समस्त देवता र याजकलाई दिने महान् ऐश्वर्य हामीलाई पनि प्रदान गर।

त्वदग्ने काव्या त्वन्मनीषास्त्वदुक्था जायन्ते राध्यानि।
त्वदेति द्रविणं वीरपेशा इत्थाधिये दाशुषे मर्त्याय ॥३॥

हे अग्निदेव ! भलो चिताउने बुद्धि र आराधनीय स्तोत्र तिमीबाटै उत्पन्न हुन्छन्। शुभ कर्म गर्ने र दान दिने मानिसका लागि पुष्टिकारक ऐश्वर्य तिमीबाटै उत्पन्न हुन्छ।

त्वद्वाजी वाजम्भरो विहाया अभिष्टिकृज्जायते सत्यशुष्मः।
त्वद्रयिर्देवजूतो मयोभुस्त्वदाशुर्जूजुवाँ अग्ने अर्वा ॥४॥

हे अग्निदेव ! बलशाली, अन्नले सम्पन्न, असल यज्ञकर्म र सत्यका बलले सम्पन्न हुनेहरू तिमीबाटै उत्पन्न हुन्छन्। देवताबाट प्रेरित हर्षप्रदायक ऐश्वर्य र द्रुतगामी अश्व पनि तिमीबाटै उत्पन्न हुन्छन्।

त्वामग्ने प्रथमं देवयन्तो देवं मर्ता अमृत मन्द्रजिह्वम्।
द्वेषोयुतमा विवासन्ति धीभिर्दमूनसं गृहपतिममूरम् ॥५॥

हे अविनाशी अग्निदेव ! तिमी देवताहरूमा श्रेष्ठ, महान् गुणले सम्पन्न, हर्षप्रदायक जिह्वा भएका, असुर संहारक, दुष्टका विनाशक, गृहपति र ज्ञानी हौ। देवताको आशा गर्ने याजकहरू विवेक पुऱ्याएर तिम्रो सेवा गर्दछन्।

आरे अस्मदमतिमारे अंह आरे विश्वां दुर्मतिं यन्निपासि।
दोषा शिवः सहसः सूनो अग्ने यं देव आ चित्सचसे स्वस्ति ॥६॥

बलका कारण उत्पन्न हे अग्निदेव ! राती कल्याणकारी र तेजस्वी भएर हितका लागि हाम्रो सुरक्षा गर्दछौ। याजकलाई पोषण दिएझैं हाम्रो अविवेक हटाऊ। हाम्रा नजिकैबाट पाप र दुर्बुद्धि हटाऊ।

[सूक्त - १२]

ऋषि - वामदेव गौतम। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**यस्त्वामग्न इनधते यतस्रुक्त्रिस्ते अन्नं कृणवत्सस्मिन्नहन्।**
**स सु द्युम्नैरभ्यस्तु प्रसक्षत्तव क्रत्वा जातवेदश्चिकित्वान् ॥१॥**

हे सर्वज्ञाता अग्निदेव ! सुरो समातेर तिमीलाई प्रदीप्त गर्ने र दिनहुँ तीनै सवनमा हविरूपी अन्न प्रदान गर्ने व्यक्तिले सन्तुष्टिदायक कार्यबाट तिम्रो तेज प्राप्त गर्दछन्। त्यस्ता तेजद्वारा तिनले सबै शत्रु परास्त गर्दछन्।

**इध्मं यस्ते जभरच्छश्रमाणो महो अग्ने अनीकमा सपर्यन्।**
**स इधानः प्रति दोषामुषासं पुष्यन्रयिं सचते घ्नन्नमित्रान् ॥२॥**

हे महान् अग्निदेव ! परिश्रमपूर्वक तिम्रा निम्ति समिधा ल्याउने र सबै ठाउँमा विद्यमान रहेका तिम्रा तेजको उपासना गर्ने मानिसले साँझबिहान तिमीलाई प्रज्वलित गराउँछन्। ती सबै बलशाली भएर आआफ्ना शत्रु नाश गर्दछन् र ऐश्वर्य प्राप्त गर्दछन्।

**अग्निरीशे बृहतः क्षत्रियस्याग्निर्वाजस्य परमस्य रायः।**
**दधाति रत्नं विधते यविष्ठो व्यानुषङ्मर्त्याय स्वधावान् ॥३॥**

शौर्य एवं पराक्रमका धनी अग्निदेव श्रेष्ठ अन्न र धनका स्वामी हुन्। अत्यन्त शक्ति र धनधान्यले सम्पन्न अग्निदेव स्तोतालाई अनन्त ऐश्वर्य प्रदान गर्दछन्।

**यच्चिद्धि ते पुरुषत्रा यविष्ठाचित्तिभिश्चकृमा कच्चिदागः।**
**कृधी ष्वस्माँ अदितेरनागान्व्येनांसि शिश्रथो विष्वगग्ने ॥४॥**

हे सधैंका युवक अग्निदेव ! तिम्रा उपासकमध्ये हामीले भुलवश कुनै पाप गरेको भए हामीलाई त्यस पापबाट मुक्त गराऊ। सबै ठाउँमा विद्यमान रहने हे अग्निदेव ! हाम्रो पाप शिथिल गराऊ।

**महश्चिदग्न एनसो अभीक ऊर्वाद्देवानामुत मर्त्यानाम्।**
**मा ते सखायः सदमिद्रिषाम यच्छा तोकाय तनयाय शं योः ॥५॥**

हे अग्निदेव ! मित्र भएका कारण हामीले इन्द्र आदि देवता वा मानिसप्रति अज्ञानवश गरेका पापका लागि दण्डित नगर। हाम्रा छोरानातिलाई आनन्द आरोग्य प्रदान गर।

**यथा ह त्यद्वसवो गौर्यं चित्पदि षितामुमुञ्चता यजत्राः।**
**एवो ष्वस्मन्मुञ्चता व्यंहः प्र तार्यग्ने प्रतरं न आयुः ॥६॥**

हे पूजनीय तथा आश्रय प्रदान गर्ने अग्निदेव ! खुट्टामा बाँधिएका गाई खोलिदिएझैं हामीलाई पापबाट मुक्त गराऊ। हे अग्निदेव ! हाम्रो आयु धेरै बढाइदेऊ।

[सूक्त - १३]

ऋषि - वामदेव गौतम। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**प्रत्यग्निरुषसामग्रमख्यद्विभातीनां सुमना रत्नधेयम्।**
**यातमश्विना सुकृतो दुरोणमुत्सूर्यो ज्योतिषा देव एति ॥१॥**

असल विचार भएका अग्निदेव उषाभन्दा पहिले नै रत्नजस्तो आफ्नो देदीप्यमान ओज फैलाउँछन्। हे अश्विनीकुमार हो ! तिमीहरू यज्ञ आदि सत्कर्म गर्नेका घरमा जाओ। तेजस्वी सूर्यदेव उदाउँदै छन्।

**ऊर्ध्वं भानुं सविता देवो अश्रेद्द्रप्सं दविध्वद्गविषो न सत्वा।**
**अनु व्रतं वरुणो यन्ति मित्रो यत्सूर्यं दिव्यारोहयन्ति ॥२॥**

बलियो साँढेले गाई खोजेर धुलो उडाएझैं तेजस्वी सूर्यले आफ्नो रश्मि माथितिर फिंजाए। सूर्यदेवको रश्मि द्युलोकमा चढेपछि मित्रावरुण आआफ्ना काममा लागे।

**यं सीमकृण्वन्तमसे विपृचे ध्रुवक्षेमा अनवस्यन्तो अर्थम्।**
**तं सूर्यं हरितः सप्त यह्वीः स्पशं विश्वस्य जगतो वहन्ति ॥३॥**

आफ्नै ठाउँमा अडिग रहने र आफ्नो कर्म नछोड्ने देवताले चारैतिरको अन्धकार नष्ट गराउन आदित्यदेवको सिर्जना गरे। सम्पूर्ण जगत्लाई नै हेर्ने आदित्यदेवलाई सात वटा अश्वले बोक्दछन्।

वहिष्ठे भिर्विहरन्यासि तन्तुमवव्ययन्नसितं देव वस्म।
दविध्वतो रश्मयः सूर्यस्य चर्मेवावाधुस्तमो अप्स्वन्तः ॥४॥

हे प्रकाशमय सूर्यदेव ! तिमी आफ्नो रश्मि फिँजाउँदै र कालो रातरूपी खास्टो हटाउँदै आफ्ना शक्तिशाली अश्वमा सबैतिरको यात्रा गर्दछौ। कम्पायमान अवस्थाको तिम्रो रश्मि आकाशका बीचमा छालाजस्तो बनेर रहेको अन्धकार हटाउँछ।

अनायतो अनिबद्ध कथायं न्यङ्ङुत्तानोऽव पद्यते न।
कया याति स्वधया को ददर्श दिवः स्कम्भः समृतः पाति नाकम् ॥५॥

आधार र बन्धनविनाका सूर्यदेव कुन शक्तिले गर्दा नखसीकन माथिमाथि जान्छन् ? त्यस शक्तिलाई कसले देखेको छ ? द्युलोकको आश्रयजस्तो भएर सत्य रूपी सूर्यदेवले स्वर्गको सुरक्षा गर्दछन्।

[सूक्त - १४]

ऋषि - वामदेव गौतम। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

प्रत्यग्निरुषसो जातवेदा अख्यद्देवो रोचमाना महोभिः।
आ नासत्योरुगाया रथेनेमं यज्ञमुप नो यातमच्छ ॥१॥

देवत्वसम्पन्न, सर्वज्ञानसम्पन्न अग्निरूपी देवताका ओजले तेजयुक्त उषालाई आलोकित गर्दछन्। हर किसिमले प्रार्थनीय हे अश्विनीकुमार हो ! तिमीहरू पनि आआफ्ना रथबाट हाम्रा यज्ञमा आओ।

ऊर्ध्वं केतुं सविता देवो अश्रेज्ज्योतिर्विश्वस्मै भुवनाय कृण्वन्।
आप्रा द्यावापृथिवी अन्तरिक्षं वि सूर्यो रश्मिभिश्चेकितानः ॥२॥

सवितादेव, सम्पूर्ण लोक प्रकाशित गराउँदै आफ्नो माथितिर फर्किएका रश्मिको आश्रय लिन्छन्। तिनी सबैको हेरविचार गर्दै आफ्ना रश्मिले द्यावापृथिवी र अन्तरिक्षलाई परिपूर्ण गराउँछन्।

आवहन्त्यरुणीर्ज्योतिषागान्मही चित्रा रश्मिभिश्चेकिताना।
प्रबोधयन्ती सुविताय देव्युषा ईयते सुयुजा रथेन ॥३॥

ऐश्वर्य धारण गर्ने, रातो वर्ण भएका, ज्योतिले सम्पन्न रश्मिका माध्यमले सुन्दर उषाहरू प्रकट हुन्छन्। तिनीहरू प्राणीलाई जगाउँदै भलो हुने काम गर्नका लागि आफ्ना राम्रा रथमा सर्वत्र यात्रा गर्दछन्।

आ वां वहिष्ठा इह ते वहन्तु रथा अश्वास उषसो व्युष्टौ।
इमे हि वां मधुपेयाय सोमा अस्मिन्यज्ञे वृषणा मादयेथाम् ॥४॥

हे अश्विनीकुमार हो ! उषाको छटा देखिएपछि, रथ तान्ने काममा अत्यन्त सक्षम तिम्रा घोडाले हाम्रा यज्ञमा तिमीहरूलाई लिएर आऊन्। हे शक्तिशाली अश्विनीकुमार हो ! यो सोमरस तिमीहरूकै लागि हो, त्यसैले यस यज्ञमा सोमरस पान गरेर आनन्दित होओ।

अनायतो अनिबद्धः कथायं न्यङ्ङुत्तानोऽव पद्यते न।
कया याति स्वधया को ददर्श दिवः स्कम्भः समृतः पाति नाकम् ॥५॥

आधार र बन्धनविनाका सूर्यदेव कुन शक्तिले गर्दा नखसीकन माथिमाथि जान्छन् ? त्यस शक्तिलाई कसले देखेको छ ? द्युलोकको आश्रयजस्तो भएर सत्य रूपी सूर्यदेवले स्वर्गको सुरक्षा गर्दछन्।

[सूक्त - १५]

ऋषि - वामदेव गौतम। देवता - अग्नि सोमक अश्विनीकुमार। छन्द - गायत्री।

अग्निर्होता नो अध्वरे वाजी सन्परि णीयते। देवो देवेषु यज्ञियः ॥१॥

यज्ञका होता, देवतामा पूजनीय अग्निदेव यज्ञमण्डपमा द्रुतगामी अश्वद्वारा ल्याइन्छन्।

परि त्रिविष्ट्यध्वरं यात्यग्नी रथीरिव। आ देवेषु प्रयो दधत् ॥२॥

अग्निदेव देवताहरूका लागि अन्न ग्रहण गरेर रथीझैँ चारैतिर तीन परिक्रमा गर्दछन्।

परि वाजपतिः कविरग्निर्हव्यान्क्रमीत्। दधद्रत्नानि दाशुषे ॥३॥

सर्वज्ञ, अन्नका स्वामी अग्निदेव याजकले दिएको हवनीय पदार्थ स्वीकार गर्दछन् र परमार्थको हित गर्न चाहनेलाई धनधान्यले परिपूर्ण बनाउँछन्।

**अयं यः सृञ्जये पुरो दैववाते समिध्यते द्युमाँ अमित्रदम्भनः ॥४॥**

देवताहरू मन लागेको विजय प्राप्त गर्नका लागि सबैभन्दा पहिले शत्रु संहार गर्ने र देदीप्यमान अग्निदेवलाई प्रदीप्त गराउँछन्।

**अस्य घा वीर ईवतोऽग्नेरीशीत मर्त्यः तिग्मजम्भस्य मीढ्हुषः ॥५॥**

तेजस्वी ज्वाला भएका, चाहिंदो परिमाण भएका र यात्रा गरिरहने अग्निदेवलाई भक्ति गर्ने व्यक्ति पराक्रमी बनेर समस्त धनका स्वामी हुन्छन्।

**तमर्वन्तं न सानसिमरुषं न दिवः शिशुम्। मर्मृज्यन्ते दिवेदिवे ॥६॥**

द्रुतगामी अश्व र द्युलोकका पुत्र आदित्यजस्ता प्रकाशमान र सबैले प्रार्थना गरिने अग्निदेवको सधैँभरि याजकहरू सेवासुसार गर्दछन्।

**बोधद्यन्मा हरिभ्यां कुमारः साहदेव्यः। अच्छा न हूत उदरम् ॥७॥**

सहदेवका पुत्र सोमक नामका राजाले हामीलाई अश्व प्रदान गर्ने विचार गरेका थिए। त्यस बेला उनका नजिकै पुगेर त्यहाँबाट सन्तुष्ट भएपछि हामी फर्क्यौं।

**उत त्या यजता हरी कुमारात्साहदेव्यात्। प्रयता सद्य आ ददे ॥८॥**

प्रशंसनीय र प्रयत्नशील अश्व हामीले सहदेवका पुत्र सोमकबाट पाएका हौं।

**एष वां देवावश्विना कुमारः साहदेव्यः। दीर्घायुरस्तु सोमकः ॥९॥**

हे अश्विनीकुमार हो! तिम्रा प्रियपात्र सहदेवका पुत्र सोमकको आयु लामो होस्।

**तं युवं देवावश्विना कुमारं साहदेव्यम्। दीर्घायुषं कृणोतन ॥१०॥**

हे अश्विनीकुमार हो! सहदेवका पुत्र सोमकलाई तिमीहरू लामो आयु प्रदान गर।

## [सूक्त – १६]

**ऋषि** – वामदेव गौतम। **देवता** – इन्द्र। **छन्द** – त्रिष्टुप्।

**आ सत्यो यातु मघवाँ ऋजीषी द्रवन्त्वस्य हरय उप नः।**
**तस्मा इदन्धः सुषुमा सुदक्षमिहाभिपित्वं करते गृणानः ॥१॥**

व्यवहारमा कुशल, सत्यनिष्ठ र धनवान् इन्द्रदेव हाम्रा नजिकै आऊन्। कुदिरहेका अश्व हाम्रा नजिकै आऊन्। इन्द्रदेवका लागि हामी याजक अन्नरूपी सोमरस पेलेर तयार गर्दछौं। सन्तुष्ट भएर उनले हाम्रो कामना पूरा गरून्।

**अव स्य शूराध्वनो नान्तेऽस्मिन्नो अद्य सवने मन्दध्यै।**
**शंसात्युक्थमुशनेव वेधाश्चिकितुषे असुर्याय मन्म ॥२॥**

हे शूरवीर इन्द्रदेव! लक्ष्यमा पुगेपछि अश्वलाई मुक्त गरेझैं हामीले गरेका यस यज्ञमा तिमी खुसी होऊ हामीलाई तिमी मुक्त गराऊ। हे इन्द्रदेव! सर्वज्ञ र असुर संहार गर्ने तिमी नै हौ। याजकहरू उशना ऋषिको जस्तै उत्तम स्तोत्र उच्चारण गर्दछन्।

**कविर्न निण्यं विदथानि साधन्वृषा यत्सेकं विपिपानो अर्चात्।**
**दिव इत्था जीजनत्सप्त कारूनह्ना चिच्चक्रुर्वयुना गृणन्तः ॥३॥**

यज्ञ सम्पन्न गरेका अवस्थामा सोमपान गरिरहेका इन्द्रदेवको पूजा गर्दाखेरि द्युलोकबाट सात खालका रश्मि उत्पन्न हुन्छन्। विद्वान्ले गूढ अर्थ जानेझैं हाम्रो रहर बुझेर वर्षा गराउने इन्द्रदेव सबै काम जान्दछन्। ती रश्मिका सहायताले याजकहरू आफ्नो कार्य सम्पन्न गर्दछन्।

**स्व१र्यद्वेदि सुदृशीकमर्कैर्महि ज्योति रुरुचुर्यद्ध वस्तोः।**
**अन्धा तमांसि दुधिता विचक्षे नृभ्यश्चकार नृतमो अभिष्टौ ॥४॥**

विस्तृत र तेजयुक्त द्युलोक राम्रो देखिएपछि सबै आवासहरू पनि राम्रा देखिन्छन्। मानिसले देख्नका लागि संसारका महान् नेता सूर्यदेव उदाएर बाक्लो अन्धकार विनाश गरिदिएका छन्।

**ववक्ष इन्द्रो अमितमृजीष्यु१भे आ पप्रौ रोदसी महित्वा।**
**अतश्चिदस्य महिमा वि रेच्यभि यो विश्वा भुवना बभूव ॥५॥**

अनन्त महिमा धारण गरेका इन्द्रदेवले समस्त भुवन आफ्नो अधिकारमा बनाएका छन्। सोमरस पान गर्ने इन्द्रदेवले आफ्ना महिमाले द्यावापृथिवी दुवैलाई पूर्ण गराएका छन्। त्यसै कारण यिनको महानताको तुलना केहीसँग गर्न सकिँदैन।

विश्वानि शक्रो नर्याणि विद्वानपो रिरेच सखिभिर्निकामैः।
अश्मानं चिद्ये बिभिदुर्वचोभिर्व्रजं गोमन्तमुशिजो वि वव्रुः ॥६॥

इन्द्रदेव मानिसका सबै कल्याणकारी कार्यका ज्ञाता हुन्। कामना गर्नेसँग मित्रभाव भएका मरुत्हरूले जलको वर्षा गराए। मरुत्हरूले आफ्नो ध्वनिले मेघ च्याते र आकाङ्क्षाले सम्पन्न हुँदै गाईको गोठै खुला गराए।

अपो वृत्रं वव्रिवांसं पराहन्प्रावत्ते वज्रं पृथिवी सचेताः।
प्रार्णांसि समुद्रियाण्यैनोः पतिर्भवच्छवसा शूर धृष्णो ॥७॥

हे इन्द्रदेव ! सबैको सुरक्षा गर्ने वज्रले पानी थुनेर राख्ने मेघको विनाश गरेपछि पानी बर्सनाले धर्ती चेतन भयो। हे शत्रु संहार गर्ने, पराक्रमी इन्द्रदेव ! आफ्ना शक्तिले तिमीले संसारको अधिपति भएर आकाशमा रहेका जललाई प्रेरित गर्‍यौ।

अपो यदद्रिं पुरुहूत दर्दराविर्भुवत्सरमा पूर्व्यं ते।
स नो नेता वाजमा दर्षि भूरिं गोत्रा रुजन्नङ्गिरोभिर्गृणानः ॥८॥

धेरैजसोले बोलाउने गरेका हे इन्द्रदेव ! सरमाले तिम्रा लागि गाई प्रकट गरेपछि तिमीले भरिभराउ पानी भएको मेघ भताभुङ्ग बनायौ। अङ्गिराका वंशजबाट स्तुति पाएपछि हामीलाई मनग्गे अन्न प्रदान गर।

अच्छा कविं नृमणो गा अभिष्टौ स्वर्षाता मघवन्नाधमानम्।
ऊतिभिस्तमिषणो द्युम्नहूतौ नि मायावानब्रह्मा दस्युरर्त ॥९॥

हे धनवान् इन्द्रदेव ! मानिसले तिम्रो सम्मान गर्दछन्। ऐश्वर्य प्रदान गर्नका लागि तिमी कुत्स भएका ठाउँमा गएका थियौ। उनले प्रार्थना गरेपछि शत्रुका उपद्रवबाट उनको रक्षा गर्‍यौ। कुटिल याजकको कार्य आफ्ना बुद्धिले जान्यौ र कुत्सको धनमा लोभिने शत्रुसँग लडाइँ गरेर तिनको विनाश गर्‍यौ।

आ दस्युघ्ना मनसा याह्यस्तं भुवत्ते कुत्सः सख्ये निकामः।
स्वे योनौ नि षदतं सरूपा वि वां चिकित्सदृतचिद्ध नारी ॥१०॥

हे इन्द्रदेव ! आफ्ना मनमा शत्रु संहार गर्ने विचार गरी तिमी कुत्सका घरमा आएका थियौ। कुत्स पनि तिमीसँग मित्रता गर्नका लागि अत्यधिक उत्सुक थिए। त्यसपछि तिमीहरू दुवै आफ्ना घरमा बसेका थियौ। त्यसै बेला सत्य कुरो बुझ्ने शची तिमीहरू दुवैको एकै किसिमको अनुहार देखेर झुक्किएकी थिइन्।

यासि कुत्सेन सरथमवस्युस्तोदो वातस्य हर्योरीशानः।
ऋज्रा वाजं न गध्यं युयूषन्कविर्यदहन्पार्याय भूषात् ॥११॥

दूरदर्शी कुत्स उपयुक्त अन्नझैं सरल मार्ग खोज्दै नदी पार हुन तयार हुँदा उनको रक्षा गर्नका लागि शत्रु विनाश गर्ने, वायुसमान गति भएका अश्वका स्वामी इन्द्र कुत्ससँग एकै रथमा आरुढ हुन्छन्।

कुत्साय शुष्णमशुषं नि बर्हीः प्रपित्वे अह्नः कुयवं सहस्रा।
सद्यो दस्यून्प्र मृण कुत्स्येन प्र सूरश्चक्रं वृहतादभीके। ॥१२॥

हे इन्द्रदेव ! कुत्सको सुरक्षाका लागि तिमीले अत्यन्त बलशाली शुष्ण नामको असुर संहार गर्‍यौ। तिमीले दिनको पहिलो भागमा हजारौं सैनिक भएका कुयव राक्षसलाई संहार गरेका थियौ। अनेकौं आफन्तले घेरिएर तिमीले उसै बेला आफ्ना वज्रले दस्युको विनाश गरेका थियौ र युद्धमा सूर्यजत्तिकै तेजस्वी शस्त्रास्त्र नष्ट गरेका थियौ।

त्वं पिप्रुं मृगयं शूशुवांसमृजिश्वने वैदथिनाय रन्धीः।
पञ्चाशत्कृष्णा नि वपः सहस्रात्कं न पुरो जरिमा वि दर्दः ॥१३॥

हे इन्द्रदेव ! वैदथिका पुत्र ऋजिश्वाको रक्षा गर्नका लागि तिमीले अत्यन्त बलशाली असुर पिप्रु र मृगयको विनाश गर्‍यौ। तिमीले पचास हजार काला राक्षस संहार गर्‍यौ। बुढ्यौलीले सौन्दर्य नासेझैं वा पुरानो लुगा च्यातेझैं शत्रुको सहर नष्ट गर्‍यौ।

सूर उपाके तन्वं दधानो वि यत्ते चेत्यमृतस्य वर्पः।
मृगो न हस्ती तविषीमुषाणः सिंहो न भीम आयुधानि बिभ्रत् ॥१४॥

हे अविनाशी इन्द्रदेव ! तिमीले सूर्यका नजिक आफ्नो देह धारण गरेका बेला तिम्रो रूप अरू धेरै

राम्रो देखिन थाल्छ। हे इन्द्रदेव ! तिमी शक्तिशाली हात्तीले जस्तै विकराल शत्रु सेना भस्म बनाउँछौ। तिमी हतियार लिएका बेला सिंहजस्तै भयङ्कर हुन्छौ।

**इन्द्रं कामा वसूयन्तो अग्मन्त्स्वर्मीळ्हे न सवने चकानाः।**
**श्रवस्यवः शशमानास उक्थैरोको न रण्वा सदृशीव पुष्टिः ॥१५॥**

असुरले उत्पन्न गरेको भय हटाउनका लागि र धनको खोजी गर्ने याजकहरू युद्धजस्तै यज्ञमा देदीप्यमान इन्द्रदेवसित अन्नको माग गर्दछन्। याजकहरू स्तोत्रले प्रार्थना गर्दै उनका नजिक पुग्दछन्। सुखदायक इन्द्रदेव सुन्दर हुनाले असल धनजस्तै लाग्दछन्।

**तमिद्व इन्द्रं सुहवं हुवेम यस्ता चकार नर्या पुरूणि।**
**यो मावते जरित्रे गध्यं चिन्मक्षू वाजं भरति स्पार्हराधाः ॥१६॥**

रहर लाग्दो ऐश्वर्य भएका इन्द्रदेवले मानिसका लागि धन र वैभव प्रदान गर्ने अनेकौं ख्यातिपूर्ण कार्य गरेका छन्। याजकले खोजेको अन्न उनी तत्काल प्रदान गर्दछन्। त्यस्ता असल र आह्वानयोग्य इन्द्रदेवलाई हामी सबैको सहायताका लागि बोलाउँछौं।

**तिग्मा यदन्तरशनिः पताति कस्मिञ्चिच्छूर मुहुके जनानाम्।**
**घोरा यदर्य समृतिर्भवात्यध स्मा नस्तन्वो बोधि गोपाः ॥१७॥**

हे शूरवीर इन्द्रदेव ! मानिसमाथि लडाइँको बलियो वज्रपात हुँदा वा घमासान युद्ध हुँदा हाम्रा शरीरको संरक्षक तिमी बन।

**भुवोऽविता वामदेवस्य धीनां भुवः सखावृको वाजसातौ।**
**त्वामनु प्रमतिमा जगन्मोरुशंसो जरित्रे विश्वध स्याः ॥१८॥**

हे इन्द्रदेव ! वामदेव ऋषिले सम्पन्न गर्ने यज्ञका तिमी संरक्षक हौ। तिमी सङ्ग्राममा हाम्रा कपटरहित मित्र हौ। हामी असल ज्ञानी बनेर तिम्रो अनुसरण गरौं र स्तोताका लागि तिमी सधैंभरि प्रार्थनीय छौ।

**एभिर्नृभिरिन्द्र त्वायुभिष्ट्वा मघवद्भिर्मघवन्विश्व आजौ।**
**द्यावो न द्युम्नैरभि सन्तो अर्यः क्षपो मदेम शरदश्च पूर्वीः ॥१९॥**

हे धनवान् इन्द्रदेव ! हामी सबै युद्धमा धनले सम्पन्न रहौं। द्युलोकजस्तै ओजस्वी आफ्ना सहायक मरुत्‌हरूसँग शत्रुलाई परास्त गर। हामी अनेकौं वर्षसम्म रातदिन तिमीलाई खुसी राख्न सकौं।

**एवेदिन्द्राय वृषभाय वृष्णे ब्रह्माकर्म भृगवो न रथम्।**
**नू चिद्यथा नः सख्या वियोषदसन्न उग्रोऽविता तनूपाः ॥२०॥**

भृगुवंशीले आफ्नो रथ इन्द्रदेवलाई प्रदान गरेझैं हामी शक्तिशाली र रहर पूरा गराउने इन्द्रदेवका लागि स्तोत्र पाठ गर्दछौं। यसो गर्दा उनको र हाम्रो मित्रता बलियो होस्। उनी हाम्रो शरीरका पोषक र संरक्षक होऊन्।

**नु ष्टुत इन्द्र नू गृणान इषं जरित्रे नद्यो३ न पीपेः।**
**अकारि ते हरिवो ब्रह्म नव्यं धिया स्याम रथ्यः सदासाः ॥२१॥**

हे इन्द्रदेव नदीले जल प्रदान गरेझैं तिमी स्तुतिले प्रशंसित भएर याजकलाई अन्न प्रदान गर। हे अश्ववान् इन्द्रदेव ! तिम्रा लागि हामी अति नै नौलो स्तोत्र रचना गर्दछौं, त्यसबाट हामी रथले युक्त तिम्रा सेवक बनौं।

## [सूक्त-१७]

**ऋषि** - वामदेव गौतम। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप् विराट्।

**त्वं महाँ इन्द्र तुभ्यं ह क्षा अनु क्षत्रं मंहना मन्यत द्यौः।**
**त्वं वृत्रं शवसा जघन्वान्त्सृजः सिन्धूँरहिना जग्रसानान् ॥१॥**

हे महान् इन्द्रदेव ! धर्तीले तिम्रा रक्षक बलको अनुसरण गर्दछ र द्युलोकले तिम्रो महिमायुक्त महत्त्व स्वीकार गर्दछ। तिमीले आफ्ना सामर्थ्यले वृत्रको संहार गरेका थियौ र अहि नामका असुरले रोकिराखेका नदीहरू प्रवाहित गरायौ।

**तव त्विषो जनिमन्रेजत द्यौ रेजद्भूमिर्भियसा स्वस्य मन्योः।**
**ऋघायन्त सुभ्वः पर्वतास आर्दन्धन्वानि सरयन्त आपः ॥२॥**

महान् तेजसम्पन्न हे इन्द्रदेव ! तिमी उत्पन्न हुँदाहुँदै तिम्रा रिससित डराएर आकाश र पृथिवी कम्पित भए र बृहत् मेघको समूह पनि डरायो। मेघले प्राणीको तिर्खा मेटाउन पानी वर्साएर मरुभूमि पनि भिजाए।

भिनद्गिरिं शवसा वज्रमिष्णन्नाविष्कृण्वानः सहसान ओजः।
वधीद्वृत्रं वज्रेण मन्दसानः सरन्नापो जवसा हतवृष्णीः ॥३॥

शत्रु परास्त गराउने इन्द्रदेवले आफ्नो ओज प्रकट गरेर आफ्नै शक्तिले वज्र प्रेरित गरे र मेघ भत्काए। उनले सोमपानबाट खुसी भएर वज्रले वृत्रलाई संहार गरे। वृत्र नाश भएपछि अवरोधरहित भएको जल वेगका साथ बग्न थाल्यो।

सुवीरस्ते जनिता मन्यत द्यौरिन्द्रस्य कर्ता स्वपस्तमो भूत्।
य ईं जजान् स्वर्यं सुवज्रमनपच्युतं सदसो न भूम ॥४॥

हे इन्द्रदेव ! तिमी खुब प्रशंसनीय वज्र लिएका र आफ्नो ठाउँबाट च्युत नहुने खालका हुनाले ऐश्वर्यले सम्पन्न छौ। तिमीलाई उत्पन्न गर्ने प्रकाशमान प्रजापतिले आफूलाई महान् सन्तानले युक्त स्वीकार गरे। ती प्रजापति असल कर्मले सम्पन्न थिए।

य एक इच्च्यावयति प्र भूमा राजा कृष्टीनां पुरुहूत इन्द्रः।
सत्यमेनमनु विश्वे मदन्ति रातिं देवस्य गृणतो मघोनः ॥५॥

मानिसका राजा, अनेकौंबाट बोलाइने इन्द्रदेवले एक्लै अनेकौं शत्रु उनका ठाउँबाट च्युत गराए। समस्त धनवान् मानिसहरू इन्द्रदेवलाई खुसी पार्दछन्। इन्द्रदेव महान् गुणले सम्पन्न छन् र याजकलाई ऐश्वर्य प्रदान गर्दछन्।

सत्रा सोमा अभवन्नस्य विश्वे सत्रा मदासो बृहतो मदिष्ठाः।
सत्राभवो वसुपतिर्वसूनां दत्रे विश्वा अधिथा इन्द्र कृष्टीः ॥६॥

सोमरस इन्द्रदेवका लागि हो। हर्षप्रदायक सोमरसले उनलाई सन्तुष्टि प्रदान गर्दछ। हे समस्त ऐश्वर्यका स्वामी इन्द्रदेव ! तिमी मानिसलाई पाल्दै उत्तम ऐश्वर्य प्रदान गर्दछौ।

त्वमध प्रथमं जायमानोऽमे विश्वा अधिथा इन्द्र कृष्टीः।
त्वं प्रति प्रवत आशयानमहिं वज्रेण मघवन्वि वृश्चः ॥७॥

हे ऐश्वर्यवान् इन्द्रदेव ! उत्पन्न हुनासाथ सबैभन्दा पहिले तिमीले सबै खालका मानिसलाई वृत्रको रिसबाट बचायौ। प्रवाहशील जल अवरुद्ध गरेर सुतेको अहिलाई तिमीले वज्रले विनाश गर्‍यौ।

सत्राहणं दाधृषिं तुम्रमिन्द्रं महामपारं वृषभं सुवज्रम्।
हन्ता यो वृत्रं सनितोत वाजं दाता मघानि मघवा सुराधाः ॥८॥

शत्रुको समूह संहार गर्ने, उनलाई थर्कमान गराउने, भगाइदिने, अत्यधिक शक्तिले युक्त असल वज्र लिएका, वृत्रलाई समाप्त गर्ने, अन्न प्रदान गर्ने, धनको रक्षा गर्ने इन्द्रदेव आफ्ना उपासकलाई धन प्रदान गर्दछन्।

अयं वृतश्चातयते समीचीर्य आजिषु मघवा शृण्व एकः।
अयं वाजं भरति यं सनोत्यस्य प्रियासः सख्ये स्याम ॥९॥

एक्लै लडाइँ जितेर प्रसिद्ध भएका ऐश्वर्यवान् इन्द्रदेवले एकत्रित भएका शत्रुको विनाश गरे। इन्द्रदेव जुन व्यक्तिलाई अन्न प्रदान गर्ने विचार गर्दछन् उसलाई दिइरहन्छन्। उनीसित हाम्रो मित्रता प्रेमपूर्ण रहोस्।

अयं शृण्वे अध जयन्नुत घ्नन्नयमुत प्र कृणुते युधा गाः।
यदा सत्यं कृणुते मन्युमिन्द्रो विश्वं दृळ्हं भयत एजदस्मात् ॥१०॥

इन्द्रदेव शत्रुलाई युद्धमा जितेर उनको विनाश गर्दै ख्याति प्राप्त गर्दछन्। उनी शत्रुसित गाई खोसेर ल्याउँछन्। इन्द्रदेव जब साँच्चै नै रिसाउँछन्, त्यस बेला स्थावरजङ्गम सबै संसार उनीसित डराउन थाल्दछ।

समिन्द्रो गा अजयत्सं हिरण्या समश्विया मघवा यो ह पूर्वीः।
एभिर्नृभिर्नृतमो अस्य शाकै रायो विभक्ता सम्भरश्च वस्वः ॥११॥

शक्तिशाली, धनवान् र असल मानिसले शत्रुसित युद्ध गरेर सुनको भण्डार, गाई, अश्व र विशाल सेना जितेर आफ्ना अधिकारमा बनाउने इन्द्रदेवको स्तुति गर्छन्। इन्द्रदेव सबैलाई आफ्नो ऐश्वर्य वितरण गर्दछन् तापनि उनी सबै ऐश्वर्यले सम्पन्न नै रहन्छन्।

कियत्स्विदिन्द्रो अध्येति मातुः कियत्पितुर्जनितुर्यो जजान।
यो अस्य शुष्मं मुहुकैरियर्ति वातो न जूतः स्तनयद्भिरभ्रैः ॥१२॥

इन्द्रदेव आफ्ना मातापिताबाट कति शक्ति पाउँछन् ? इन्द्रले आफूलाई उत्पन्न गर्ने प्रजापतिबाट यस स्थुल संसार सृष्टि गराए र उनँले संसारलाई बारम्बार सामर्थ्य पनि प्रदान गरे। तिनै इन्द्रदेव गर्जिने मेघबाट प्रेरित वायुझैं बोलाइन्छन्।

क्षियन्तं त्वमक्षियन्तं कृणोतीयर्ति रेणुं मघवा समोहम्।
विभञ्जनुरशनिमाँ इव द्यौरुत स्तोतारं मघवा वसौ धात् ॥१३॥

हे धनवान् इन्द्रदेव ! तिमी निराश्रितलाई आश्रय प्रदान गर्दछौ र पाप नष्ट गर्दछौ। तिमी द्युलोकजस्तै बलियो वज्र धारण गरेर शत्रुको संहार गर्दछौ। तिमी धनवान् छौ, त्यसैले स्तोतालाई सबै धन प्रदान गर्दछौ।

अयं चक्रमिषणत्सूर्यस्य न्येतशं रीरमत्ससृमाणम्।
आ कृष्ण ईं जुहुराणो जिघर्ति त्वचो बुध्ने रजसो अस्य योनौ ॥१४॥

इन्द्रदेवले आदित्यको चक्र प्रेरित गरे र सङ्ग्रामका लागि गएका एतशलाई फिर्ता गरे। कुटिल चाल भएका काला मेघले तेजस्वी जलको मूल स्थान आकाशमा विद्यमान इन्द्रदेवलाई अभिषेक गऱ्यो।

असिक्न्यां यजमानो न होता ॥१५॥

रातका समयमा याजकहरू सोमरसले इन्द्रदेवलाई अभिषेक गर्दछन्। उनी पनि राति नै सबै मानिसलाई परम ऐश्वर्य प्रदान गर्दछन्।

गव्यन्त इन्द्रं सख्याय विप्रा अश्वायन्तो वृषणं वाजयन्तः।
जनीयन्तो जनिदामक्षितोतिमा च्यावयामोऽवते न कोशम् ॥१६॥

हामी ज्ञानी याजक गाई, घोडा, अन्न र स्त्रीहरूको कामना गर्दछौं। तिर्खाएकाले जलाशयबाट चाहिने जति पानी झिकेझैं हामी पनि सिर्जनशील क्षमता प्रदान गर्ने र कहिल्यै नाश नहुने रक्षा साधनले सम्पन्न इन्द्रदेवलाई आफूतिर बोलाउँछौं।

त्राता नो बोधि ददृशाना आपिरभिख्याता मर्डिता सोम्यानाम्।
सखा पिता पितृतमः पितृणां कर्तेमु लोकमुशते वयोधाः ॥१७॥

हे इन्द्रदेव ! तिमी रक्षकजस्तो भएर सबैको हेरविचार गर्दै हाम्रो रक्षा गर। सोमरस तयार गर्ने साधकका लागि तिमी आनन्द दिने मित्र हौ। प्रजापतिको जस्तै तिम्रो प्रसिद्धि छ। पालनकर्ताहरूमध्ये तिमी सर्वश्रेष्ठ हौ। यस लोकका स्रष्टा तिमी हौ र याजकका लागि अन्नदाता हौ।

सखीयतामविता बोधि सखा गृणान इन्द्र स्तुवते वयो धाः।
वयं ह्या ते चकृमा सबाध आभिः समीभिर्महयन्त इन्द्र ॥१८॥

हे प्रशंसनीय इन्द्रदेव ! हामी तिम्रा मित्रताको आशा गर्दछौं। हाम्रा लागि तिमी संरक्षक र मित्र हौ। याजकका लागि तिमी अन्न धारण गर। हे इन्द्रदेव ! हामी सङ्कटग्रस्त भएर स्तोत्रले तिम्रो प्रार्थना गर्दै तिमीलाई बोलाउँछौं।

स्तुत इन्द्रो मघवा यद्ध वृत्रा भूरीण्येको अप्रतीनि हन्ति।
अस्य प्रियो जरिता यस्य शर्मन्नकिर्देवा वारयन्ते न मर्ताः ॥१९॥

धनवान् इन्द्रदेव मानिसबाट प्रशंसित भएपछि कहिल्यै पछाडि फर्किन नजान्ने कैयौं शत्रुलाई एक्लै विनाश गरिदिन्छन्। त्यस्ता इन्द्रदेवका शरणमा रहने प्रिय याजकलाई न त देवताले नष्ट गर्न सक्दछन् न कुनै मानिसले नै सक्छन्।

एवा न इन्द्रो मघवा विरप्शी करत्सत्या चर्षणीधृदनर्वा।
त्वं राजा जनुषां धेह्यस्मे अधि श्रवो माहिनं यज्जरित्रे ॥२०॥

अनेकौं किसिमका शब्द गर्ने, मानिसको हेरविचार गर्ने, शत्रुविनाका र ऐश्वर्यले युक्त इन्द्रदेव हाम्रा सत्य अभिलाषा पूरा गराउँछन्। हे इन्द्रदेव ! तिमी सबै जन्मनेका सम्राट् हौ। स्तुति गर्ने मानिस जुन महान् कीर्ति तिमीबाट प्राप्त गर्दछन्, त्यो कीर्ति मानिसका लागि प्रचुर मात्रामा प्रदान गर।

नू ष्टुत इन्द्र नू गृणान इषं जरित्रे नद्यो३ न पीपेः।
अकारि ते हरिवो ब्रह्म नव्यं धिया स्याम रथ्यः सदासाः ॥२१॥

हे इन्द्रदेव ! नदीहरूले जल प्रदान गरेझैं तिमी स्तुतिले प्रशंसित याजकलाई अन्न प्रदान गर। हे अश्ववान् इन्द्रदेव ! तिम्रा लागि हामी अति नै नौलो स्तोत्र रचना गर्दछौं, त्यसबाट हामी रथले युक्त भएर तिम्रा सेवक बनौं।

[सूक्त - १८]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अयं पन्था अनुवित्तः पुराणो यतो देवा उदजायन्त विश्वे।
अतश्चिदा जनिषीष्ट प्रवृद्धो मा मातरममुया पत्तवे कः ॥१॥

यो सनातन मार्ग हो। सबै मानिस र देवताले यसै मार्गबाट उत्पन्न भएर उन्नति गरेका छन्। हे मानिस हो ! उत्पत्तिको आधार स्वरूप रहेकी मातालाई विनाश नगर।

नाहमतो निरया दुर्गहैतत्तिरश्चता पार्श्वान्निर्गमाणि।
बहूनि मे अकृता कर्त्वानि युध्यै त्वेन सं त्वेन पृच्छै ॥२॥

पहिले भनिएको मार्ग अत्यन्त अप्ठ्यारो छ। त्यसैले हामी यस मार्गबाट जाँदैनौं। हामी नजिकैको मार्गबाट जान्छौं। अरूले गर्नुपर्ने अनेकौं काम पनि हामी गर्नेछौं। हामीले सँगै लड्नुपरेको छ र एकले अर्कासित सोध्नुपर्दछ।

परायतीं मातरमन्वचष्ट न नानु गान्यनु नू गमानि।
त्वष्टुर्गृहे अपिबत्सोममिन्द्रः शतधन्यं चम्वोः सुतस्य ॥३॥

हामीले मरणासन्न अवस्थाकी मातालाई देखेका छौं। त्यसैले हामी पुराना मार्गको अनुसरण गर्दैनौं। तत्काल नै अर्को मार्गको अनुसरण गर्नेछौं। काठका भाँडामा सोमरस पेलेर तयार गर्ने त्वष्टाका घरमा इन्द्रदेवले अनेकौं लाभ प्रदान गर्ने सोमरस पान गरे।

किं स ऋधक्कृणवद्यं सहस्रं मासो जभार शरदश्च पूर्वीः।
नही न्वस्य प्रतिमानमस्त्यन्तर्जातेषूत ये जनित्वाः ॥४॥

अदितिले शक्तिशाली इन्द्रदेवलाई अनेकौं वर्ष र महिनाभरि पालन गरिन्। त्यसैले इन्द्रदेव विपरीत कार्य किन गर्दथे र ? अहिलेसम्म जन्मिएका र पछि जन्मनेहरूमा कोही पनि उनको समानता गर्न सक्दैनन्।

अवद्यमिव मन्यमाना गुहाकरिन्द्रं माता वीर्येणा न्यृष्टम्।
अथोदस्थात्स्वयमत्कं वसान आ रोदसी अपृणाज्जायमानः ॥५॥

माताका गर्भरूपी गुफामा उत्पन्न भएका इन्द्रदेवलाई समर्थ मानेर शक्तिपूर्वक बाहिर निकालियो। उत्पन्न हुनासाथ आफ्नो तेजद्वारा ओज धारण गरेर उनी स्वयं उठे र द्यावापृथिवीलाई आफ्ना तेजले पूर्ण गराए।

एता अर्षन्त्यललाभवन्तीर्ऋतावरीरिव सङ्क्रोशमानाः।
एता वि पृच्छ किमिदं भनन्ति कमापो अद्रिं परिधिं रुजन्ति ॥६॥

हर्षको ध्वनि गर्दै जल भरिएका नदीहरू कलकल ध्वनिका साथ प्रवाहित हुँदै छन्। हे ऋषि ! यी नदीहरू के भन्दै छन् ? यिनीहरूसित सोध। यिनले इन्द्रदेवको गुणगान गरेका हुन् ? इन्द्रदेवका आयुधले जल थुनेर राख्ने मेघ भत्काउँछ।

किमु ष्विदस्मै निविदो भनन्तेन्द्रस्यावद्यं दिधिषन्त आपः।
ममैतान्पुत्रो महता वधेन वृत्रं जघन्वाँ असृजद्वि सिन्धून् ॥७॥

इन्द्रदेवले वृत्रको संहार गरेपछि ब्रह्महत्या पापका विषयमा वेदका वाणीले के निर्देश गरेका छन् ? उनका पापकर्मलाई पानीले फिँजका रूपमा ग्रहण गरेको छ। मेरा पुत्र इन्द्रदेवले आफ्ना वज्रले संहार गरेर यी नदी बगाए।

ममच्चन त्वा युवतिः परास ममच्चन त्वा कुषवा जगार।
ममच्चिदापः शिशवे ममृड्युर्ममच्चिदिन्द्रः सहसोदतिष्ठत् ॥८॥

हे इन्द्रदेव ! तिम्री माता अदितिले खुसी भएर तिमीलाई उत्पन्न गरिन्। एक पटक कुषवा नाम भएकी राक्षसीले तिमीलाई निल्ने प्रयास गरी। सुत्केरी कोठामै तिमी राक्षसीको वध गर्न तयार

भएका थियौं। तिमी बालकै छँदा जलले तिमीलाई खुसी बनाए। त्यसपछि तिमी अत्यधिक शक्तिशाली भएर आएका हौ।

**ममच्चन ते मघवन्व्यंसो निविविध्वाँ अप हनू जघान।**
**अधा निविद्ध उत्तरो बभूवाञ्छिरो दासस्य सं पिणग्वधेन॥९॥**

हे धनवान् इन्द्रदेव ! व्यंस नामका राक्षसले मदमत्त भएर तिम्रा थुतुनामा प्रहार गऱ्यो। त्यसपछि अत्यधिक बलशाली भएर तिमीले त्यस राक्षसको शिर वज्रले छिनायौ।

**गृष्टिः ससूव स्थविरं तवागामनाधृष्यं वृषभं तुम्रमिन्द्रम्।**
**अरीढहं वत्सं चरथाय माता स्वयं गातुं तन्व इच्छमानम्॥१०॥**

गाईले बाछो जन्माएझैं अदिति माताले आफ्ना रहरले इन्द्रदेवलाई उत्पन्न गर्छिन्। इन्द्रदेव उमेरले प्रौढ, अत्यन्त शक्तिशाली, अजेय, प्रेरक, नमारिने खालका र आफूखुसी यात्रा गर्नका लागि शरीर रोज्ने खालका छन्।

**उता माता महिषमन्ववेनदमी त्वा जहति पुत्र देवाः।**
**अथाब्रवीद्वृत्रमिन्द्रो हनिष्यन्त्सखे विष्णो वितरं वि क्रमस्व॥११॥**

माता अदितिले महिमावान् बालक इन्द्रदेवसित देवताले तिम्रो त्याग गर्न लागेका छन् भन्ने बिन्ती बिसाइन्। त्यसपछि वृत्रको संहार गर्ने विचार गर्दै इन्द्रदेवले विष्णुलाई हे सखा तिमी अत्यन्तै पराक्रमी होऊ भनेका थिए।

**कस्ते मातरं विधवामचक्रच्छयुं कस्त्वामजिघांसच्चरन्तम्।**
**कस्ते देवो अधि मार्डीक आसीद्यत्प्राक्षिणाः पितरं पादगृह्य॥१२॥**

हे इन्द्रदेव ! तिम्रा पिताका खुट्टा समातेर फ्यालेर तिम्री माता अदितिलाई कुन देवताले विधवा बनायो ? हिँड्न वा सुत्न लागेका बेलामा तिमीलाई कुन देवताले मार्न खोजेको थियो ? तिम्रो तुलनामा अर्को कुन देवताले तिमीभन्दा बढी सुख दिन सक्ला र ?

**अवर्त्या शुन आन्त्राणि पेचे न देवेषु विविदे मर्डितारम्।**
**अपश्यं जायाममहीयमानामधा मे श्येनो मध्वा जभार॥१३॥**

भोकले आत्तिएर हामीले खाने नहुने कुकुरका आन्द्राभुँडी पकायौं। हामीले देवताहरूमा इन्द्रदेवभन्दा भिन्न अरू कुनै पनि सुख प्रदान गर्ने देवता पाएनौं। हाम्रा पत्नी अपमानित हुँदै गरेको हामीले देखेपछि इन्द्रदेवले हाम्रा लागि गतिलो खाने कुरो ल्याइदिए।

[सूक्त - १९]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**एवा त्वामिन्द्र वज्रिन्नत्र विश्वे देवासः सुहवास ऊमाः।**
**महामुभे रोदसी वृद्धमृष्वं निरेकमिद्वृणते वृत्रहत्ये॥१॥**

वज्र हातमा लिएका हे इन्द्रदेव ! सुरक्षा गर्ने सबै देवता र द्यावापृथिवी वृत्रको संहार गर्नका लागि तिमीलाई आह्वान गर्दछन्। तिमी प्रार्थनीय, वृद्ध, महान् र दर्शनीय छौ।

**अवासृजन्त जिव्रयो न देवा भुवः सम्राडिन्द्र सत्ययोनिः।**
**अहन्नहिं परिशयानमर्णः प्र वर्तनीररदो विश्वधेनाः॥२॥**

हे इन्द्रदेव ! वृद्ध पिताले तरुण छोरालाई प्रेरणा दिएझैं समस्त देवता शत्रु नाश गर्नका लागि तिमीलाई प्रेरित गर्दछन्। हे इन्द्रदेव ! तिमी सत्यका आश्रय हौ। तिमी सम्पूर्ण लोकका अधिष्ठाता हौ। जलका वरिपरि सुतेको अहिलाई विनाश गरेर सबैलाई खुसी बनाउने सरितालाई तिमीले नै प्रेरित गरेका हौ।

**अतृप्णुवन्तं वियतमबुध्यमबुध्यमानं सुषुपाणमिन्द्र।**
**सप्त प्रति प्रवत आशयानमहिं वज्रेण वि रिणा अपर्वन्॥३॥**

हे इन्द्रदेव ! तिमीले अतृप्त इच्छा भएका, शिथिल अङ्गका, अज्ञानी, सुत्न मात्रै खोज्ने, सात नदी थुनेर बसेको र अन्तरिक्षमा निवास गर्ने वृत्रलाई वज्रले संहार गऱ्यौ।

**अक्षोदयच्छवसा क्षाम बुध्नं वार्ण वातस्तविषीभिरिन्द्रः।**
**दृळ्हान्यौभ्नादुशमान ओजोऽवाभिनत्ककुभः पर्वतानाम्॥४॥**

वायुदेवले आफ्ना शक्तिले पानी हल्लाएझैं इन्द्रदेवले आफ्ना शक्तिले द्युलोक र भूलोक थर्काए।

बलको आकाङ्क्षा भएका इन्द्रदेवले अत्यन्त शक्तिशाली शत्रुको विनाश गरे र पर्वतका पँखेटा छिनाए।

**अभि प्र दद्रुर्जनयो न गर्भं रथाइव प्र ययुः साकमद्रयः।**
**अतर्पयो विसृत उब्ज ऊर्मीन्त्वं वृताँ अरिणा इन्द्र सिन्धून् ॥५॥**

हे इन्द्रदेव ! सन्तानका नजिक आमा गएझैं मरुत्‌हरू तिम्रा नजिकै जान्छन्। लडाइँमा रथहरू सँगै हिँडेझैं आयुधहरू तिमीसँगै हुन्छन्। तिमीले मेघ भत्काएर नदीलाई खुसी पार्दै तिनको रोकिएको पानी बगाइदियौ।

**त्वं महीमवनिं विश्वधेनां तुर्वीतये वय्याय क्षरन्तीम्।**
**अरमयो नमसैजदर्णः सुतरणाँ अकृणोरिन्द्र सिन्धून् ॥६॥**

हे इन्द्रदेव ! तुर्वीत र वय्य राजाका लागि तिमीले पृथ्वीलाई सन्तुष्ट गराएर खाद्यान्न प्रदान गर्ने र अन्नजलले समृद्ध बनायौ। हे इन्द्रदेव ! तिमीले नदीलाई सरलतापूर्वक तर्न सकिने बनायौ।

**प्राग्रुवो नभन्वोऽ३ न वक्वा ध्वस्रा अपिन्वद्युवतीर्ऋतज्ञाः।**
**धन्वान्यज्राँ अपृणक्तृषाणाँ अधोगिन्द्रः स्तर्योऽ३ दंसुपत्नीः ॥७॥**

इन्द्रदेवले शत्रुका सहायक सेनाजस्ता किनारालाई नष्ट गराउने, पानीले भरिएका र अन्न पैदा गर्ने सरितालाई परिपूर्ण गरे। उनले मरुभूमि र तिर्खाएका व्यक्तिलाई सन्तुष्ट पारे र दस्युले लुकाएका गाई दुहे।

**पूर्वीरुषसः शरदश्च गूर्ता वृत्रं जघन्वाँ असृजद्वि सिन्धून्।**
**परिष्ठिता अतृणद्बद्बधानाः सीरा इन्द्रः स्रवितवे पृथिव्या ॥८॥**

इन्द्रदेवले बाक्लो अँध्यारोमा छोपिएका उषा र वर्षलाई वृत्र मारेपछि मुक्त गराए। उनले मेघ विदीर्ण गराएर वृत्रले थुनिराखेका नदी प्रवाहित गरेर पृथ्वीलाई सन्तुष्ट पारे।

**वम्रीभिः पुत्रमग्रुवो अदानं निवेशनाद्धरिव आ जभर्थ।**
**व्य१न्धो अख्यदहिमाददानो निर्भूदुखच्छित्समरन्त पर्व ॥९॥**

हे अश्वसम्पन्न इन्द्रदेव ! धमिराले सिध्याउन लागेका अग्रुका पुत्र भक्ष्यमानलाई उनका ठाउँबाट तिमीले बाहिर निकाल्यौं। बाहिर निकालिएका बेला अन्धा अग्रुपुत्रले सर्प राम्ररी देखे। त्यसपछि कमिलाले चिलेका अङ्गहरू तिमीले सग्ला बनाइदियौ।

**प्र ते पूर्वाणि करणानि विप्राविद्वाँ आह विदुषे करांसि।**
**यथायथा वृष्ण्यानि स्वगूर्तापांसि राजन्नर्याविवेषीः ॥१०॥**

तेजले सम्पन्न हे इन्द्रदेव ! तिमी सर्वज्ञ र स्वयं प्रशंसित छौ। तिमीले मानिसका लागि हितकारी र पराक्रमले युक्त कर्म जसरी सम्पन्न गर्‍यौ, ती सबैका ज्ञाता हामी वामदेव ऋषिहरू तिनको वर्णन गर्दछौं।

**नू ष्टुत इन्द्र नू गृणान इषं जरित्रे नद्यो३ न पीपेः।**
**अकारि ते हरिवो ब्रह्म नव्यं धिया स्याम रथ्यः सदासाः ॥११॥**

हे इन्द्रदेव नदीले जल प्रदान गरेझैं तिमी स्तुतिले प्रशंसित भएर याजकका लागि अन्न प्रदान गर। हे अश्ववान् इन्द्रदेव ! तिम्रा लागि हामी अति नौला स्तोत्र रचना गर्दछौं, त्यसबाट हामी रथले युक्त तिम्रा सेवक बनौं।

## [सूक्त - २०]

**ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।**

**आ न इन्द्रो दूरादा न आसादभिष्टिकृदवसे यासदुग्रः।**
**ओजिष्ठेभिर्नृपतिर्वज्रबाहुः सङ्गे समत्सु तुर्वणिः पृतन्यून् ॥१॥**

अभीष्ट पूरा गराउने, अत्यन्त तेजस्वी, बलयुक्त, मानिसका पालक, वज्रधारी, अनेकौं सानाठूला युद्धमा शत्रु सखाप पार्ने इन्द्रदेव हाम्रो रक्षा गर्नका लागि टाढाका देशबाट आऊन् र यदि नजिकै छन् भनेदेखि त्यहाँबाट पनि आऊन्।

**आ न इन्द्रो हरिभिर्यात्वच्छार्वाचीनोऽवसे राधसे च।**
**तिष्ठाति वज्री मघवा विरप्शीमं यज्ञमनु नो वाजसातौ ॥२॥**

महान् ऐश्वर्यवान् वज्रधारी इन्द्रदेव हाम्रो रक्षा गर्दै धन दिनका लागि अनुकूल भएर हरि नामका

अश्वमा सुविस्तासाथ आऊन। हाम्रो यस यज्ञमा आफ्नो उपयुक्त हविष्यान्नको भाग ग्रहण गर्नका लागि यहाँ विराजमान होऊ।

**इमं यज्ञं त्वमस्माकमिन्द्र पुरो दधत्सनिष्यसि क्रतुं नः।**
**श्वघ्नीव वज्रिन्त्सनये धनानां त्वया वयमर्य आजिञ्जयेम ॥३॥**

हे इन्द्रदेव ! मित्रजस्तै भएर हितको कामना गर्दै हामीले सम्पन्न गर्ने यज्ञ ग्रहण गर। वज्र धारण गर्ने हे इन्द्रदेव ! सिकारीले हरिणको सिकार गरेझैं हामी तिम्रो सहायताबाट ऐश्वर्य लाभ गरिरहौं र युद्धमा विजयी होऔं।

**उशन्नु षु णः सुमना उपाके सोमस्य नु सुषुतस्य स्वधावः।**
**पा इन्द्र प्रतिभृतस्य मध्वः समन्धसा ममदः पृष्ठ्येन ॥४॥**

हे अन्नवान् इन्द्रदेव ! खुसी मनले हामीकहाँ आऊ र हामीले पेलेर तयार पारेको सोमरस पान गर। हाम्रो पछाडितिर भएको अन्नरूपी सोमरस पान गरेर अफ खुसी होऊ।

**वि यो ररप्श ऋषिभिर्नवेभिर्वृक्षो न पक्वः सृण्यो न जेता।**
**मर्यो न योषामभिमन्यमानोऽच्छा विवक्मि पुरुहूतमिन्द्रम् ॥५॥**

फल भरिएको वृक्ष र हतियार चलाउनमा कुशल योद्धाजस्ता इन्द्रदेवलाई नयाँ ऋषिले प्रशंसा गर्छन्। धेरै तिरबाट बोलाइने इन्द्रदेवलाई मानिस पत्नीको जस्तो प्रशंसा गर्दछन्।

**गिरिर्न यः स्वतवाँ ऋष्वा इन्द्रः सनादेव सहसे जात उग्रः।**
**आदर्ता वज्रं स्थविरं न भीम उद्नेव कोशं वसुना न्यृष्टम् ॥६॥**

महान् र पराक्रमी इन्द्रदेव पर्वतजत्तिकै बलिया छन्। उनी शत्रुमाथि विजय पाउनका लागि उहिल्यैदेखि उत्पन्न भएका हुन् र जलले भरिएको कलशजस्तै तेजले युक्त विशाल वज्र धारण गर्दछन्।

**न यस्य वर्ता जनुषा न्वस्ति न राधस आमरीता मघस्य।**
**उद्वावृषाणस्तविषीव उग्रास्मभ्यं दद्धि पुरुहूत रायः ॥७॥**

हे इन्द्रदेव ! तिमी उत्पन्न भएपछि कुनै पनि विनाशक बाँकी रहेका छैनन् र तिमीबाट प्रदान गरिएको ऐश्वर्यको विनाशक पनि कोही छैन। हे शक्तिशाली, पराक्रमी र धेरैले बोलाउने इन्द्रदेव ! तिमी अत्यन्तै सामर्थ्यशाली छौ। हामीलाई ऐश्वर्य प्रदान गर।

**ईक्षे रायः क्षयस्य चर्षणीनामुत व्रजमपवर्तासि गोनाम्।**
**शिक्षानरः समिथेषु प्रहावान्वस्वो राशिमभिनेतासि भूरिम् ॥८॥**

हे इन्द्रदेव ! मानिसलाई ऐश्वर्य प्रदान गरेर घरमा नियन्त्रित गराउने र गोठ खुला गर्ने तिमी नै हौ। ज्ञानद्वारा मानिसको उन्नति गराउने र सङ्ग्राममा शत्रुलाई प्रहार गर्ने तिमी नै हौ। मनग्गे धनसम्पत्ति प्राप्त गराउने पनि तिमी नै हौ।

**कया तच्छृण्वे शच्या शचिष्ठो यया कृणोति मुहु का चिदृष्वः।**
**पुरु दाशुषे विचयिष्ठो अंहोऽथा दधाति द्रविणं जरित्रे ॥९॥**

शक्तिशाली र महान् इन्द्रदेव कुन सामर्थ्यले प्रख्यात छन् ? उनले बारम्बार कर्म गर्ने शक्ति कुन हो ? दानदाता इन्द्रदेव पाप नष्ट गर्छन् र याजकलाई ऐश्वर्य प्रदान गर्दछन्।

**मा नो मर्धीरा भरा दद्धि तन्नः प्र दाशुषे दातवे भूरि यत्ते।**
**नव्ये देष्णे शस्ते अस्मिन्त उक्थे प्र ब्रवाम वयमिन्द्र स्तुवन्तः ॥१०॥**

हे इन्द्रदेव ! मानिसलाई वध नगर, बरु हाम्रो पोषण गर। हे इन्द्रदेव ! हविदातालाई दान गर्ने तिम्रो प्रचुर धन हामीलाई प्रदान गर। हामी तिम्रो स्तुति गर्दछौं। यस नयाँ, दान गर्न योग्य, अनुशासित यज्ञमा हामी तिम्रो विशेष गुणगान गर्दछौं।

**नू ष्टुत इन्द्र नू गृणान इषं जरित्रे नद्यो३ न पीपेः।**
**अकारि ते हरिवो ब्रह्म नव्यं धिया स्याम रथ्यः सदासाः ॥११॥**

हे इन्द्रदेव नदीले जल प्रदान गरेझैं तिमी स्तुतिले प्रशंसित भएर याजकका लागि अन्न प्रदान गर। हे अश्ववान् इन्द्रदेव ! तिम्रा लागि हामी अति नै नौलो स्तोत्र रचना गर्दछौं, त्यसबाट हामी रथयुक्त तिम्रा सेवक बनौं।

[सूक्त - २१]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

आ यात्विन्द्रोऽवस उप न इह स्तुतः सधमादस्तु शूरः।
वावृधानस्तविषीर्यस्य पूर्वीर्द्यौर्न क्षत्रमभिभूति पुष्यात् ॥१॥

इन्द्रदेव द्युलोकजस्तै तेजसम्पन्न छन्। उनको बल मनग्गे छ। उनी हाम्रो सुरक्षाका लागि आऊन्। स्तुतिले सन्तुष्ट भएर यस यज्ञमा हामीलाई हर्ष प्रदान गरून् र शत्रुलाई पराजित गराउने बलले पुष्ट पारुन्।

तस्येदिह स्तवथ वृष्ण्यानि तुविद्युम्नस्य तुविराधसो नॄन्।
यस्य क्रतुर्विदथ्योऽ न सम्राट् साह्वान्तरुत्रो अभ्यस्ति कृष्टीः ॥२॥

इन्द्रदेव शासकजस्तै भएर शत्रु पराजित गर्ने र तिनको विनाश गर्ने खालका छन्। उनको कुशलता र सामर्थ्य मानिसमाथि नियन्त्रण गर्ने खालको छ। हे याजकहरू हो ! त्यस्तै तेजस्वी र प्रचुर ऐश्वर्य भएका देवताको तिमीहरू प्रार्थना गर।

आ यात्विन्द्रो दिव आ पृथिव्या मक्षू समुद्रादुत वा पुरीषात्।
स्वर्णरादवसे नो मरुत्वान् परावतो वा सदनादृतस्य ॥३॥

हे इन्द्रदेव ! तिमी सबै मरुत्हरूसँग दिव्यलोक, भूलोक, अन्तरिक्षलोक, जल, सूर्यलोक, टाढाको ठाउँ र यज्ञस्थलबाट हाम्रो सुरक्षाका लागि आऊ।

स्थूरस्य रायो बृहतो य ईशे तमु ष्टवाम विदथेष्विन्द्रम्।
यो वायुना जयति गोमतीषु प्र धृष्णुया नयति वस्यो अच्छ ॥४॥

इन्द्रदेव सबै महान् ऐश्वर्यहरूका अधिपति हुन्, उनी प्राणरूपी शक्तिका सहयोगले गाई प्राप्त गर्ने सङ्ग्राममा शत्रुका सेनामाथि विजय प्राप्त गर्दछन्। उनी याजकलाई असल ऐश्वर्य प्रदान गर्दछन्। उनैलाई हामी यस यज्ञमण्डपमा स्तुति गर्दछौं।

उप यो नमो नमसि स्तभायन्नियर्ति वाचं जनयन्यजध्यै।
ऋञ्जसानः पुरुवार उक्थैरेन्द्रं कृण्वीत सदनेषु होता ॥५॥

इन्द्रदेव समस्त लोकलाई आश्रय प्रदान गर्दछन् र यज्ञ गर्ने याजकका लागि गर्जनपूर्वक जल बर्साउँछन्। उनी स्तोत्रले वन्दनीय छन् र कर्म पूरा गर्ने खालका छन् उनै इन्द्रलाई याजकले यज्ञमा खुसी गराउँछन्।

धिषा यदि धिषण्यन्तः सरण्यान्त्सदन्तो अद्रिमौशिजस्य गोहे।
आ दुरोषाः पास्त्यस्य होता यो नो महान्त्संवरणेषु वह्निः ॥६॥

उषिक्का वंशजका आवासमा स्तोताले स्तुति गर्दै सोम कुट्नका लागि तयार हुँदा इन्द्रदेव आउँछन्। उनी सङ्ग्राममा हामीजस्ता मानिसका सहायक हुन्छन्। उनी याजकबाट आयोजित यज्ञका सम्पादक हुन्। उनको क्रोध भयङ्कर छ।

सत्रा यदीं भार्वरस्य वृष्णः सिषक्ति शुष्मः स्तुवते भराय।
गुहा यदीमौशिजस्य गोहे प्र यद्धिये प्रायसे मदाय ॥७॥

संसारको पालनपोषण गर्ने प्रजापतिका पुत्र र खोजेका कुराको वर्षा गराउने इन्द्रदेवको सामर्थ्यले स्तुति गर्ने याजकको सुरक्षा गर्दछ। त्यो सामर्थ्य याजकलाई पोषण गर्नका लागि उनका गुफारूपी हृदयमा प्रकट हुन्छ। त्यो सामर्थ्य याजकका आन्तरिक कर्ममा रहेको हुन्छ। त्यो उनको खुसी र रहर पूरा गर्नका लागि उत्पन्न हुन्छ र सधैं उनलाई पालन गर्दछ।

वि यद्वरांसि पर्वतस्य वृण्वे पयोभिर्जिन्वे अपां जवांसि।
विदद्गौरस्य गवयस्य गोहे यदी वाजाय सुध्योऽ वहन्ति ॥८॥

इन्द्रदेवले बादलको घुम्टो उघारिदिए र सरितालाई प्रवाहित जलले परिपूर्ण गराए। शक्तिशाली इन्द्रदेवका लागि मेधावी यजमानले यज्ञमण्डपमा सोमरस तयार गर्दा उनी याजकलाई गाई आदि धनधान्य प्रदान गर्दछन्।

भद्रा ते हस्ता सुकृतोत पाणी प्रयन्तारा स्तुवते राध इन्द्र।
का ते निषत्तिः किमु नो ममत्सि किं नोदुदु हर्षसे दातवा उ ॥९॥

हे इन्द्रदेव ! तिम्रा दुवै हितकारी हात असल कर्म गर्दछन् र याजकलाई ऐश्वर्य प्रदान गर्दछन्। हे

इन्द्रदेव ! तिम्रो निवास कहाँ छ ? हामीलाई तिमी किन हर्षित गराउँदैनौ ? हामीलाई ऐश्वर्य प्रदान गर्नका लागि तिमी चाँडै प्रसन्न किन हुँदैनौ ?

**एवा वस्व इन्द्रः सत्यः सम्राड्ढन्ता वृत्रं वरिव पूरवे कः।**
**पुरुष्टुत क्रत्वा नः शग्धि रायो भक्षीय तेऽवसो दैवयस्य ॥१०॥**

प्रशंसित भएपछि सत्यनिष्ठ, धनका स्वामी तथा वृत्र विनाश गर्ने इन्द्रदेव याजकलाई ऐश्वर्य प्रदान गर्दछन्। हे बहुलबाट प्रशंसा प्राप्त इन्द्रदेव ! हामीजस्ता मानिसका प्रशंसाले सन्तुष्ट भएर हामीलाई धनधान्य प्रदान गर। त्यसबाट हामी असल ऐश्वर्य सेवन गर्न सकौं।

**नू ष्टुत इन्द्र नू गृणान इषं जरित्रे नद्यो३ न पीपेः।**
**अकारि ते हरिवो ब्रह्म नव्यं धिया स्याम रथ्यः सदासाः ॥११॥**

हे इन्द्रदेव ! नदीहरूले जल प्रदान गरेझैं स्तुतिले प्रशंसित भएर हामीजस्ता याजकका लागि अन्न प्रदान गर। हे अश्ववान् इन्द्रदेव ! तिम्रा लागि हामी अति नौलो स्तोत्र रचना गर्दछौं, त्यसबाट हामी रथयुक्त तिम्रा सेवक बनौं।

## [सूक्त – २२]

**ऋषि** – वामदेव गौतम। **देवता** – इन्द्र। **छन्द** – त्रिष्टुप्।

**यन्न इन्द्रो जुजुषे यच्च वष्टि तन्नो महान्करति शुष्म्या चित्।**
**ब्रह्म स्तोमं मघवा सोममुक्था यो अश्मानं शवसा बिभ्रदेति ॥१॥**

अत्यन्त बलशाली इन्द्रदेव मानिसले दिएको हविष्यान्न सेवन गर्दछन्। उनी आफ्नो वज्र लिएर शक्तिपूर्वक आउँछन्, आहुति, स्तुति, सोमरस र स्तोत्रहरू स्वीकार गर्दछन्।

**वृषा वृषन्धिं चतुरश्रिमस्यन्नुग्रो बाहुभ्यां नृतमः शचीवान्।**
**श्रिये परुष्णीमुषमाण ऊर्णां यस्याः पर्वाणि सख्याय विव्ये ॥२॥**

कामना वर्षा गराउने इन्द्रदेव आफ्ना भुजामा वर्षणकारी चार धारा भएको वज्र शत्रुमाथि फ्याँक्दछन्। अत्यन्त पराक्रमी, असल नेताजस्ता र कर्ममा लागेका हुनाले परुष्णी नदी परिपूर्ण गराउँछन्। उनले परुष्णी नदीका विभिन्न प्रदेश मित्रताका लागि ओगटे।

**यो देवो देवतमो जायमानो महो वाजेभिर्महद्भिश्च शुष्मैः।**
**दधानो वज्रं बाह्वोरुशन्तं द्यामभेन रेजयत्प्र भूम ॥३॥**

ओजस्वी र महान् इन्द्रदेव उत्पन्न हुँदै विशाल अन्न र बृहत् बलले सम्पन्न थिए। उनले दुवै भुजामा सुन्दर वज्र धारण गरेर आफ्नो शक्तिले द्युलोक र भूलोक प्रकम्पित गराए।

**विश्वा रोधांसि प्रवतश्च पूर्वीर्द्यौर्ऋष्वाज्जनिमन्रेजत क्षाः।**
**आ मातरा भरति शुष्म्या गोर्नृवत्परिज्मन्नोनुवन्त वाताः ॥४॥**

इन्द्रदेव उत्पन्न हुनेबित्तिकै समस्त पर्वत, जल भरिएका नदी, द्युलोक र पृथिवी कम्पित भए। बलशाली इन्द्रदेव सूर्यका माता द्यावापृथिवीलाई धारण गर्दछन्। उनीबाट प्रेरणा पाएर वायुदेव मानिसको जस्तै ध्वनि गर्दछन्।

**ता तू त इन्द्र महतो महानि विश्वेष्वित्सवनेषु प्रवाच्या।**
**यच्छूर धृष्णो धृषता दधृष्वानहिं वज्रेण शवसाविवेषीः ॥५॥**

हे शूरवीर र शत्रु दमन गर्ने इन्द्रदेव ! तिमीले समस्त भुवन धारण गरेर शत्रु परास्त गर्ने वज्रले शक्तिपूर्वक अहिको विनाश गरेका थियौ। हे इन्द्रदेव ! तिमी महिमावान् छौ र तिम्रो कर्म पनि महिमावान् छ। तिमी सम्पूर्ण सवनमा प्रार्थना गर्न योग्य छौ।

**ता तू ते सत्या तुविनृम्ण विश्वा प्र धेनवः सिस्रते वृष्ण ऊध्नः।**
**अधा ह त्वद्वृषमणो भियानाः प्र सिन्धवो जवसा चक्रमन्त ॥६॥**

हे बलवान् इन्द्रदेव ! तिम्रा सबै कर्म निश्चित सत्य हुन्। हे इन्द्रदेव ! तिमी अभिलाषा वर्षा गराउँछौ। तिम्रा डरले गाईले थुनबाट दुध चुहाउँछन्। असल मन हुने हे इन्द्रदेव ! तिम्रा डरले नै नदी वेगका साथ बगेका छन्।

**अत्राह ते हरिवस्ता उ देवीरवोभिरिन्द्र स्तवन्त स्वसारः।**
**यत्सीमनु प्र मुचो बद्बधाना दीर्घामनु प्रसितिं स्यन्दयध्यै ॥७॥**

हे अश्ववान् इन्द्रदेव ! वृत्रले थुनेका विशाल नदी तिमीले प्रवाहित हुनका लागि मुक्त गरिदिएपछि तिमीबाट संरक्षित हुनका लागि नदीले तिम्रो प्रार्थना गरे।

पिपीडे अंशुर्मद्यो न सिन्धुरा त्वा शमी शशमानस्य शक्तिः।
अस्मद्र्यक्शुशुचानस्य यम्या आशुर्न रश्मिं तुव्योजसं गोः ॥८॥

हे इन्द्रदेव ! तिम्रा लागि हर्षप्रदायक सोमरस पिनेर जल मिसाईकन तयार गरेका छौं। सारथीले द्रुतगामी अश्वलाई लगाम लगाएझैं बलशाली सोमरसले तेजसम्पन्न र प्रार्थना योग्य इन्द्रदेवलाई हामीकहाँ लिएर आओस्।

अस्मे वर्षिष्ठा कृणुहि ज्येष्ठा नृम्णानि सत्रा सहुरे सहांसि।
अस्मभ्यं वृत्रा सुहनानि रन्धि जहि वधर्वनुषो मर्त्यस्य ॥९॥

हे सहनशीलताका प्रतिमूर्ति इन्द्रदेव ! हाम्रा लागि शत्रु पराजित गराउने, महान् र प्रशंसनीय पुरुषार्थ गर। विनाश गर्नुपर्ने शत्रुलाई हाम्रा अधीनमा बनाऊ र हिंसा गर्ने व्यक्तिलाई आयुधले विनाश गर।

अस्माकमित्सु शृणुहि त्वमिन्द्रास्मभ्यं चित्राँ उप माहि वाजान्।
अस्मभ्यं विश्वा इषणः पुरन्धीरस्माकं सु मघवन्बोधि गोदाः ॥१०॥

हे इन्द्रदेव ! हामी मानिसको प्रार्थना तिमी सुन र अनेकौं किसिमका अन्न प्रदान गर। हाम्रा लागि सबै ज्ञानलाई प्रेरित गर र ज्ञानसम्पन्न गराऊ। हे धनवान् इन्द्रदेव ! हाम्रा लागि तिमी गाई प्रदान गर्दछौ।

नू ष्टुत इन्द्र नू गृणान इषं जरित्रे नद्यो३ न पीपेः।
अकारि ते हरिवो ब्रह्म नव्यं धिया स्याम रथ्यः सदासाः ॥११॥

हे इन्द्रदेव नदीले जल प्रदान गरेझैं तिमी पनि स्तुतिले प्रशंसित भएर याजकहरूका लागि अन्न प्रदान गर। हे अश्ववान् इन्द्रदेव ! तिम्रा लागि हामी अति नै नौलो स्तोत्र रचना गर्दछौं, त्यसबाट हामी रथले युक्त भएर तिम्रा सेवक बनौं।

[सूक्त - २३]

**ऋषि** - वामदेव गौतम। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

कथा महामवृधत्कस्य होतुर्यज्ञं जुषाणो अभि सोममूधः।
पिबन्नुशानो जुषमाणो अन्धो ववक्ष ऋष्वः शुचते धनाय ॥१॥

मानिसले गरेका प्रार्थनाले इन्द्रदेवलाई कसरी उन्नति गर्दछन् ? उनी कुन यज्ञकर्ताका यज्ञमा प्रेमपूर्वक आउँछन् ? महान् इन्द्रदेव सोमपान गर्दै र रुचिपूर्वक अन्न ग्रहण गर्दै कुन याजकलाई प्रदान गर्न लागि तेजस्वी धन धारण गर्दछन् ?

को अस्य वीरः सधमादमाप समानंश सुमतिभिः को अस्य।
कदस्य चित्रं चिकिते कदूती वृधे भुवच्छशमानस्य यज्योः ॥२॥

कुन वीरले इन्द्रदेवसित सोमपान गर्दछ ? कुन व्यक्ति उनका असल बुद्धिले सम्पन्न होला ? उनी अचम्मको धन कहिले बाँड्लान् ? स्तुति गर्ने याजकलाई दह्रो बनाउनका लागि इन्द्रदेव रक्षणसाधनले कहिले सम्पन्न हुन्छन् ?

कथा शृणोति हूयमानमिन्द्रः कथा शृण्वन्नवसामस्य वेद।
का अस्य पूर्वीरुपमातयो ह कथैनमाहुः पपुरिं जरित्रे ॥३॥

हे इन्द्रदेव ! बोलाउनेको स्तुति तिमी कसरी सुन्दछौ ? स्तुति सुनेर स्तोताको मार्ग तिमी कसरी जान्दछौ ? तिम्रा पुराना दान कुनकुन हुन् ? ती दानलाई इन्द्रदेवका याजकको रहर पूरा गराउने दान भनेर किन भन्दछन् ?

कथा सबाधः शशमानो अस्य नशदभि द्रविणं दीध्यानः।
देवो भुवन्नवेदा म ऋतानां नमो जगृभ्वाँ अभियज्जुजोषत् ॥४॥

आपद्मा परेका जुन याजकले इन्द्रदेवको प्रार्थना गर्दछन् र यज्ञद्वारा तेजसम्पन्न हुन्छन्, तिनीहरूले उनको ऐश्वर्य कसरी पाउलान् ? प्रकाशवान् इन्द्रदेव आहुति ग्रहण गरेर हामीसित खुसी हुँदा हाम्रो प्रार्थना राम्ररी जान्न सक्ने हुन्छन्।

कथा कदस्या उषसो व्युष्टौ देवो मर्तस्य सख्यं जुजोष।
कथा कदस्य सख्यं सखिभ्यो ये अस्मिन्कामं सुयुजं ततस्रे ॥५॥

उषा प्रकट भएपछि प्रकाशसम्पन्न इन्द्रदेवले मानिसको बन्धुत्व कसरी र कहिले प्राप्त गर्दछन् ?

इन्द्रदेवका लागि असल र मनोहर आहुति बढाउने याजक मित्रका लागि आफ्नो मित्रता उनले कहिले र कसरी प्रकाशित गर्दछन् ?

**किमादमत्रं सख्यं सखिभ्यः कदा नु ते भ्रात्रं प्र ब्रवाम ।**
**श्रिये सुदृशो वपुरस्य सर्गाः स्व१र्ण चित्रतममिष आ गोः ॥६॥**

हे इन्द्रदेव ! शत्रुको आक्रमणबाट सुरक्षा पाउन हामी याजक तिम्रो मित्रताको वर्णन स्तुति गर्नेसमक्ष कसरी गरौं ? तिम्रा बन्धुत्वका भावको वर्णन कहिले गरौं ? सुन्दर देखिने इन्द्रदेवको कार्य स्तुतिकर्ताका हितका लागि हो। सूर्यदेवजस्तै तेजसम्पन्न र सर्वत्र यात्रा गर्ने इन्द्रदेवका मनोहर तेजको सबै मानिसले कामना गरेका हुन्छन्।

**द्रुहं जिघांसन्ध्वरसमनिन्द्रां तेतिक्ते तिग्मा तुजसे अनीका ।**
**ऋणा चिद्यत्र ऋणया न उग्रो दूरे अज्ञाता उषसो बबाधे ॥७॥**

विद्रोह गर्ने, हिंसक कार्य गर्ने र इन्द्रदेवलाई नमान्ने राक्षसको संहार गर्नका लागि उनले आफ्नो धारिलो आयुध अझै तिखारे। हामी मानिसलाई ऋणले पनि उषा कालमा ज्यादै बाधा पुऱ्याउँछ। पराक्रमी इन्द्रदेव उषाकालमै हाम्रो ऋण टाढैबाट नाश गराउँछन्।

**ऋतस्य हि शुरुधः सन्ति पूर्वीर्ऋतस्य धीतिर्वृजिनानि हन्ति ।**
**ऋतस्य श्लोको बधिरा ततर्द कर्णा बुधानः शुचमान आयोः ॥८॥**

सत्य वा ऋतसित अनेकौं शक्ति छन्। ऋतदेवको प्रार्थनाले दुष्कर्मको विनाश हुन्छ। उनको सद्बुद्धि प्रदान गर्ने प्रार्थनाबाट कान नसुन्ने बहिराले पनि लाभ प्राप्त गर्दछन्।

**ऋतस्य दृळहा धरुणानि सन्ति पुरूणि चन्द्रा वपुषे वपूंषि ।**
**ऋतेन दीर्घमिषणन्त पृक्ष ऋतेन गाव ऋतमा विवेशुः ॥९॥**

ऋतका पुष्टिदायक, हर्षप्रदायक आदि अनेकौं रूप छन्। ऋतदेवका नजिकै मानिस प्रचुर अन्नको कामना गर्दछन् र उनका सहायताले यज्ञ आदि असल कार्यमा दान गर्नका लागि गाई प्रयुक्त हुन्छन्।

**ऋतं येमान ऋतमिद्वनोत्यृतस्य शुष्मस्तुरया उ गव्युः ।**
**ऋतया पृथ्वी बहुले गभीरे ऋताय धेनू परमे दुहाते ॥१०॥**

ऋतदेवलाई वशमा गराउनका लागि याजकहरू भक्ति गर्दछन्। ऋतदेवका शक्तिले गाई र अश्व प्रदान गराउँछ। यिनीबाटै प्रेरणा पाएर द्यावापृथिवी विस्तीर्ण र गम्भीर भएका छन् र उनीहरूका लागि नै गाईले दुध दिने गरेका छन्।

**नू ष्टुत इन्द्र नू गृणान इषं जरित्रे नद्यो३ न पीपेः ।**
**अकारि ते हरिवो ब्रह्म नव्यं धिया स्याम रथ्यः सदासाः ॥११॥**

हे इन्द्रदेव नदीले जल प्रदान गरेझैं तिमी पनि स्तुतिले प्रशंसित भएर याजकका लागि अन्न प्रदान गर। हे अश्ववान् इन्द्रदेव ! तिम्रा लागि हामी अति नै नौलो स्तोत्र रचना गर्दछौं, त्यसबाट हामी रथले युक्त भएर तिम्रा सेवक बनौं।

[सूक्त - २४

**ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप् अनुष्टुप्।**

**का सुष्टुतिः शवसः सूनुमिन्द्रमर्वाचीनं राधस आ ववर्तत् ।**
**ददिर्हि वीरो गृणते वसूनि स गोपतिर्निष्षिधां नो जनासः ॥१॥**

बलका पुत्र र हामीतिर आउने इन्द्रदेवलाई कुन प्रार्थनाले ऐश्वर्य प्रदान गर्नका लागि प्रवृत्त गर्दछ ? हे याजक हो ! पराक्रमी र गाईका पालक इन्द्रदेवले हामी मानिसलाई शत्रुको ऐश्वर्य प्रदान गरून्। हामी उनको प्रार्थना गर्दछौं।

**स वृत्रहत्ये हव्यः स ईड्यः स सुष्टुत इन्द्रः सत्यराधाः ।**
**स यामन्ना मघवा मर्त्याय ब्रह्मण्यते सुष्वये वरिवो धात् ॥२॥**

वृत्र संहार गर्ने, प्रशंसनीय इन्द्रदेव युद्धमा बोलाइन्छन्। असल रीतिले प्रार्थना गर्दाखेरि उनी यथार्थ रूपमा ऐश्वर्य प्रदान गर्दछन्। स्तोता र सोमयज्ञ गर्ने याजकलाई धनवान् इन्द्रदेव ऐश्वर्य प्रदान गर्दछन्।

तमिन्नरो वि ह्वयन्ते समीके रिरिक्वांसस्तन्वः कृण्वत त्राम्।
मिथो यत्त्यागमुभयासो अग्मन्नरस्तोकस्य तनयस्य सातौ ॥३॥

आफ्नो सहायताका लागि सबै मानिस इन्द्रदेवलाई बोलाउँछन्। याजकहरू तपस्याले शरीर सुकाउँदै उनैलाई आफ्नो संरक्षक बनाउँछन्। याजक र स्तोता दुवै पुत्रपौत्रादि प्राप्तिका निम्ति उनैका नजिक जान्छन्।

ऋतूयन्ति क्षितयो योग उग्राशुषाणासो मिथो अर्णसातौ।
सं यद्विशोऽववृत्रन्त युध्मा आदिन्नेम इन्द्रयन्ते अभीके ॥४॥

हे बलशाली इन्द्रदेव ! मानिसहरू सबै दिशामा विद्यमान जल प्राप्त गर्नका लागि संयुक्त रूपमा यजन गर्दछन्। युद्ध गर्ने मानिस सङ्ग्राममा एकत्र हुँदा सबैले इन्द्रदेवको सहायता पाउने इच्छा गर्दछन्।

आदिद्ध नेम इन्द्रियं यजन्त आदित्पक्तिः पुरोडाशं रिरिच्यात्।
आदित्सोमो वि पपृच्यादसुष्वीनादिज्जुजोष वृषभं यजध्यै ॥५॥

युद्धमा योद्धाहरू बलशाली इन्द्रदेवको पूजन गर्दछन् र पुरोडाश पकाएर प्रदान गर्दछन्। सोम पेल्ने याजकले सोम नपेल्ने याजकलाई ऐश्वर्यबाट परै राख्दछन्। अन्य मानिस कामना पूर्ति गराउने बलशाली इन्द्रदेवका निम्ति आहुति समर्पित गर्दछन्।

कृणोत्यस्मै वरिवो य इत्थेन्द्राय सोममुशते सुनोति।
सध्रीचीनेन मनसाविवेनन्तमित्सखायं कृणुते समत्सु ॥६॥

हितकारी भावना भएका इन्द्रदेवका लागि मानिसहरू सोम पेल्दछन्। उनीहरूलाई तिनले ऐश्वर्य प्रदान गर्दछन्। असल मनले उनको इच्छा गर्ने र सोम पेल्ने याजकसँग इन्द्रदेव युद्धमा मित्रताको भावनाले सम्बन्ध स्थापित गर्दछन्।

य इन्द्राय सुनवत्सोममद्य पचात्पक्तीरुत भृज्जाति धानाः।
प्रति मनायोरुचथानि हर्यन्तस्मिन्दधद्वृषणं शुष्ममिन्द्रः ॥७॥

आज मानिसहरू इन्द्रदेवका लागि सोम पेल्दै छन्, पुरोडाश पकाउँदै छन् र लावा भुट्दै छन्। स्तुति सुनेर इन्द्रदेव उनीहरूलाई अत्यधिक सामर्थ्य प्रदान गर्दछन्।

यदा समर्यं व्यचेदृघावा दीर्घं यदाजिमभ्यख्यदर्यः।
अचिक्रदद् वृषणं पत्न्यच्छा दुरोण आ निशितं सोमसुद्भिः ॥८॥

शत्रु संहार गर्ने इन्द्रदेवले शत्रुलाई राम्ररी चिनेका छन् र ठूला युद्धमा विद्यमान रहन्छन्। सोम पेल्नेका पत्नीहरू प्रोत्साहित हुन्छन् र कामना पूरा गर्ने र वर्षा गराउने इन्द्रदेवको बयान गर्दछन्।

भूयसा वस्नमचरत्कनीयोऽविक्रीतो अकानिषं पुनर्यन्।
स भूयसा कनीयो नारिरेचीद्दीना दक्षा वि दुहन्ति प्र वाणम् ॥९॥

कसैले मनग्गे ऐश्वर्य प्रदान गरेर अलिकति मात्रै वस्तु प्राप्त गरेको छ। त्यो वस्तु पनि नबिकेपछि फेरि गएर आफ्नो धन फिर्ता माग्न थाल्यो। धेरै धन फिर्ता गरेर त्यो थोरै लिन व्यापारीले मानेन। जानेका होऊ या नहोऊ, किनबेच हुँदा जसले जे बोलेको छ, अब त्यही हुन्छ भन्ने कुरो उसले गर्‍यो।

क इमं दशभिर्ममेन्द्रं क्रीणाति धेनुभिः। यदा वृत्राणि जंघनदथैनं मे पुनर्ददत्।

दस वटा गाई दिएर हाम्रा इन्द्रदेवलाई कसले किन्न सक्छ ? उनले शत्रु संहार गरेपछि फेरि त्यो सबै फिर्ता गरौं।

नू ष्टुत इन्द्र नू गृणान इषं जरित्रे नद्यो३ न पीपेः।
अकारि ते हरिवो ब्रह्म नव्यं धिया स्याम रथ्यः सदासाः ॥११॥

हे इन्द्रदेव नदीले जल प्रदान गरेझैं स्तुतिले प्रशंसित भएर हामीजस्ता याजकलाई तिमी अन्न प्रदान गर। हे अश्ववान् इन्द्रदेव । तिम्रा लागि हामी अति नै नौलो स्तोत्र रचना गर्दछौं। त्यसबाट हामी रथले युक्त भएर तिम्रा सेवक बनौं।

[सूक्त - २५]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**को अद्य नर्यो देवकाम उशन्निन्द्रस्य सख्यं जुजोष।**
**को वा महेऽवसे पार्याय समिद्धे अग्नौ सुतसोम ईट्टे ॥१॥**

देवताको जस्ता रहरले आज कुन मानिसले इन्द्रदेवसित मित्रता गर्न चाहेको छ ? सोम पेलेर तयार गर्ने कुन याजक सङ्कटबाट पार पाउनका लागि र महान् सुरक्षाका लागि अग्नि प्रदीप्त भएपछि स्तुति गर्लान् ?

**को नानाम वचसा सोम्याय मनायुर्वा भवति वस्त उस्राः।**
**क इन्द्रस्य युज्यं कः सखित्वं को भ्रात्रं वष्टि कवये क ऊती ॥२॥**

कुन याजक आफ्ना बोलीले सोमपान गर्ने इन्द्रदेवको स्तुति गर्लान् ? उनले प्रदान गरेका गाई कसले पाल्लान् ? उनका सहायताको कसले कामना गर्लान् ? को उनका बन्धुत्वको कामना गर्लान् ? को दूरदर्शी इन्द्रदेवका संरक्षणको कामना गर्दछन् ?

**को देवानामवो अद्या वृणीते क आदित्याँ अदितिं ज्योतिरीट्टे।**
**कस्याश्विनाविन्द्रो अग्निः सुतस्यांशोः पिबन्ति मनसाविवेनम् ॥३॥**

देवताको संरक्षण गर्न को चाहन्छ ? आदित्य, अदिति र प्रकाशरूपी उषाको प्रार्थना को गर्दछन् ? कुन याजकले पेलेर तयार पारेको सोमरस इन्द्रदेव, अग्निदेव र अश्विनीकुमार प्रार्थनाले खुसी हुँदै मन अघाउने गरी पान गर्लान् ?

**तस्मा अग्निर्भारतः शर्म यंसज्ज्योक्पश्यात्सूर्यमुच्चरन्तम्।**
**य इन्द्राय सुनवामेत्याह नरे नर्याय नृतमाय नृणाम् ॥४॥**

मानिसका मित्र र नायकमा सर्वश्रेष्ठ नायक इन्द्रदेवका निम्ति सोमरस पेलेर तयार गर्ने याजकलाई भरणपोषण गर्ने अग्निदेवले सुख प्रदान गरून् र उदाउँदै गरेका सूर्यदेवलाई ती याजकले लामो समयसम्म देखून्।

**न तं जिनन्ति बहवो न दभ्रा उर्वस्मा अदितिः शर्म यंसत्।**
**प्रियः सुकृत्प्रिय इन्द्रे मनायुः प्रियः सुप्रावीः प्रियो अस्य सोमी ॥५॥**

इन्द्रदेवका लागि सोम पेल्ने याजकलाई शत्रुले कहिल्यै सताउँदैन। ती याजकलाई माता अदितिले अत्यधिक खुसी प्रदान गर्दछिन्। असल कर्म गर्ने, यज्ञ गर्ने, सन्मार्गमा चल्ने र इन्द्रदेवका लागि सोम यज्ञ गर्ने याजकका लागि उनीहरू स्नेही हुन्छन्।

**सुप्राव्यः प्राशुषाडेष वीरः सुष्वेः पक्तिं कृणुते केवलेन्द्रः।**
**नासुष्वेरापिर्न सखा न जामिर्दुष्प्राव्योऽवहन्तेदवाचः ॥६॥**

शत्रु संहार गर्ने, पराक्रमी इन्द्रदेव केवल सन्मार्गमा चल्ने र सोम यज्ञ गर्ने याजकको मात्रै पुरोडाश ग्रहण गर्दछन्। उनी सोम यज्ञ नगर्ने याजकका मित्र वा बन्धु हुँदैनन्। खराब मार्गमा चल्ने र प्रार्थना नगर्नेहरूका लागि उनी संहारकर्ता नै हुन्।

**न रेवता पणिना सख्यमिन्द्रोऽसुन्वता सुतपाः सं गृणीते।**
**आस्य वेदः खिदति हन्ति नग्नं वि सुष्वये पक्तये केवलो भूत् ॥७॥**

सोमपान गर्ने इन्द्रदेव सोम यज्ञ नगर्ने, ऐश्वर्य भईकन पनि लोभी व्यापारीसँग मित्रता स्थापित गर्दैनन्। तिनीहरूको अनावश्यक ऐश्वर्य नाश गरिदिन्छन्। सोमरस पेलेर तयार गर्ने र पुरोडाश पकाउने याजकका मात्रै उनी मित्र हुन्छन्।

**इन्द्रं परेऽवरे मध्यमास इन्द्रं यान्तोऽवसितास इन्द्रम्।**
**इन्द्रं क्षियन्त उत युध्यमाना इन्द्रं नरो वाजयन्तो हवन्ते ॥८॥**

उत्कृष्ट, निकृष्ट र मध्यम खालका मानिस इन्द्रदेवलाई बोलाउँछन्। हिँड्ने र बसिरहने पनि उनलाई बोलाउँछन्। घरमा रहेका र युद्ध गर्न लागेका मानिस पनि उनलाई आह्वान गर्दछन्। त्यसका अतिरिक्त अन्नको कामना गर्ने मानिसले पनि उनलाई बोलाउँछन्।

[सूक्त - २६]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अहं मनुरभवं सूर्यश्चाहं कक्षीवाँ ऋषिरस्मि विप्रः।
अहं कुत्समार्जुनेयं न्यृञ्जेऽहं कविरुशना पश्यता मा ॥१॥

हे याजक हो ! मनुको रूप म हुँ, म आदित्य हुँ र म नै विवेकी कक्षीवान् ऋषि हुँ। म नै अर्जुनीको पुत्र कुत्सको रूप हुँ र म नै क्रान्तदर्शी उशना ऋषि हुँ। मलाई राम्ररी हेर।

अहं भूमिमददामार्यायाहं वृष्टिं दाशुषे मर्त्याय।
अहमपो अनयं वावशाना मम देवासो अनु केतमायन् ॥२॥

मैले सत्पुरुषका लागि भूमि दान गरें र दानी मानिसका लागि जल बर्साएँ। सुसाउँदै बग्ने जलका धारालाई मैले नै बढाएको थिएँ। सबै देवताले मेरै सङ्कल्प पछ्याऊन्।

अहं पुरो मन्दसानो व्यैरं नव साकं नवतीः शम्बरस्य।
शततमं वेश्यं सर्वताता दिवोदासमतिथिग्वं यदावम् ॥३॥

सोमरस पान गरेर खुसी भएपछि मैले शम्बासुरका उनान्सय सहर एकै चोटि ध्वस्त गरेको थिएँ। यज्ञमा अतिथिलाई गाई प्रदान गर्ने राजर्षि दिवोदासलाई मैले नै रक्षा गरें। उनको निवास गर्नका लागि सयौं योग्य सहर बनाएको थिएँ।

प्र सु ष विभ्यो मरुतो विरस्तु प्र श्येनः श्येनेभ्य आशुपत्वा।
अचक्रया यत्स्वधया सुपर्णो हव्यं भरन्मनवे देवजुष्टम् ॥४॥

हे मरुत् हो ! बाज पक्षीका तुलनामा सुन्दर पँखेटा हुने पक्षी ज्यादा सुन्दर, शक्तिशाली र तीव्र गतिमा उड्ने छ। देवताले ग्रहण गर्ने सोमरसरूपी हव्य राम्रो पँखेटा भएका उसै चराले पाङ्ग्राविनाका रथमा स्वर्गलोकबाट ल्याएर मानिसलाई दिएको थियो।

भरद्यदि विरतो वेविजानः पथोरुणा मनोजवा असर्जि।
तूयं ययौ मधुना सोम्येनोत श्रवो विविदे श्येनो अत्र ॥५॥

सारा संसार थर्काउँदै द्युलोकबाट सोमरस लिएर उडेपछि विस्तृत आकाशमार्गमा त्यस चराले मनजत्तिकै वेगमा उडानको गति लियो। शान्ति प्रदान गर्ने र मिठो रस चाँडै ल्याएर त्यस बाज पक्षीले संसारमा मनग्गे ख्याति कमायो।

ऋजीपी श्येनो ददमानो अंशुं परावतः शकुनो मन्द्रं मदम्।
सोमं भरद्दादृहाणो देवावान्दिवो अमुष्मादुत्तरादादाय ॥६॥

निकै टाढाको देशबाट सोमरस लिएर छोटो बाटो उड्दै देवतासँगै निवास गर्ने त्यस बाजले मिठो र आनन्द प्रदान गर्ने सोमरस द्युलोकको उचाइबाट टिपेर कुशलताका साथ पृथ्वीमा पुऱ्यायो।

आदाय श्येनो अभरत्सोमं सहस्रं सवाँ अयुतं च साकम्।
अत्रा पुरन्धिरजहादरातीर्मदे सोमस्य मूरा अमूरः ॥७॥

बाजले हजारौंको सङ्ख्यक यज्ञबाट सोमरस प्राप्त गरेर उडेको थियो। अनेकौं असल कर्म गर्ने र ज्ञानसम्पन्न इन्द्रदेवले सोमरस पान गरेर हर्षित हुँदै मूर्ख शत्रु संहार गरे।

[सूक्त - २७]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप् शक्वरी।

गर्भे नु सन्नन्वेषामवेदमहं देवानां जनिमानि विश्वा।
शतं मा पुर आयसीररक्षन्नध श्येनो जवसा निरदीयम् ॥१॥

गर्भमा छँदै मैले इन्द्र आदि देवताका जन्मका विषयमा राम्ररी जानेको थिएँ। गर्भमा छँदै सयौं फलामे सहरले मेरो सुरक्षा गरेका थिए। त्यसपछि म श्येन पक्षीको जस्तै वेगले बाहिर निस्केर आएको थिएँ।

न घा स मामप जोषं जभाराभीमास त्वक्षसा वीर्येण।
ईर्मा पुरन्धिरजहादरातीरुत वातौं अतरच्छूशुवानः ॥२॥

मलाई मायामोहले प्रभावित गर्न सकेन। मैले आफ्ना तिखा बलले ती दुःख ढाकें। सबैलाई प्रेरणा दिने परमात्माले गर्भमा रहेका शत्रु संहार गरेका थिए र त्यसपछि पनि गर्भमा रहेका वायुको जस्तो वेग भएका शत्रु विनाश गरेका थिए।

अव यच्छ्येनो अस्वनीदध द्योर्वि यद्यदि वात ऊहुः पुरन्धिम्।
सृजद्यदस्मा अव ह क्षिपज्ज्यां कृशानुरस्ता मनसा भुरण्यन् ॥३॥

सोम हरण गर्ने वेलामा श्येन पक्षीले द्युलोकमा गर्जना गर्दा सोमका रक्षकले वृद्धि बढाउने सोमरस खोस्ने प्रयास गरे। त्यसपछि मनजस्तै वेगले हिँड्ने सोमको रक्षा गर्ने कृशानुले धनुषमा ताँदो चढाए र श्येन पक्षीलाई वाणले हाने।

ऋजिप्य ईमिन्द्रावतो न भुज्युं श्येनो जभार बृहतो अधि ष्णोः।
अन्तः पतत्पतत्र्यस्य पर्णमध यामनि प्रसितस्य तद्वेः ॥४॥

अश्विनीकुमारले बलवान् इन्द्रदेवका संरक्षित ठाउँबाट भुज्युलाई अपहरण गरेझैं इन्द्रदेवले रक्षा गरेको सोम सोझो मार्गबाट यात्रा गर्ने श्यने पक्षीले द्युलोकबाट अपहरण गरेका थियो। त्यस वेलाको सङ्ग्राममा कृशानुका हतियारले घाइते भएर त्यस पक्षीको एकातिरको पुरानो प्वाँख खसेको थियो।

अध श्वेतं कलशं गोभिरक्तमापिप्यानं मघवा शुक्रमन्धः। अध्वर्युभिः प्रयत
मध्वो अग्रमिन्द्रो मदाय प्रति धत्पिबध्यै शूरो मदाय प्रति धत्पिबध्यै ॥५॥

गाईको दुध मिसाएर पवित्र कलशमा राखिएको, सन्तुष्ट गराउने, स्वादिला रसमध्येको सबैभन्दा उत्तम, अन्नरूपी सोमरस अध्वर्युहरूले प्रदान गर्दा धनवान् इन्द्रदेवले आनन्द प्राप्त गर्नका लागि पान गरून् र त्यसको सुरक्षा गरून्।

[सूक्त - २८]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

त्वा युजा तव तत्सोम सख्य इन्द्रो अपो मनवे सस्रुतस्कः।
अहन्नहिमरिणात्सप्त सिन्धूनपावृणोदपिहितेव खानि ॥१॥

हे सोम ! तिमीसित मित्रता गरेर तिम्रो सहयोग पाएपछि इन्द्रदेवले मनुका लागि जल उत्पन्न गरेर बगाए। उनले अहिलाई संहार गरेर सात नदी प्रवाहित गरेका थिए र वृत्रले थुनेको जलको मुहान खोले।

त्वा युजा नि खिदत्सूर्यस्येन्द्रश्चक्रं सहसा सद्य इन्दो।
अधि ष्णुना बृहता वर्तमानं महो द्रुहो अप विश्वायु धायि ॥२॥

हे सोम ! तिम्रो सहयोगले विस्तृत द्युलोकमा यात्रा गर्ने सूर्यचक्रलाई इन्द्रदेवले आफ्ना सामर्थ्यले नियन्त्रणमा राखे। सर्वत्र यात्रा गर्ने महान् द्रोहशक्तिले सम्पन्न भएर उनले सूर्यचक्रमाथि अधिकार गरेका थिए।

अहन्निन्द्रो अदहदग्निरिन्दो पुरा दस्यून्मध्यन्दिनादभीके।
दुर्गे दुरोणे क्रत्वा न यातां पुरू सहस्रा शर्वा नि बर्हीत् ॥३॥

हे सोम ! तिम्रो सहायताले इन्द्रदेवले मध्याह्नभन्दा पहिले नै शत्रु विनाश गरिसकेका थिए र अग्निदेवले तिनलाई भस्मीभूत पारे। रक्षाविनाका दुर्गमा प्रदेशमा यात्रा गर्नेलाई चोरले मारेझैं इन्द्रदेवले आफ्ना बलले अनेकौं सहस्र शत्रुसेनालाई विनाश गरे।

विश्वस्मात्सीमधमाँ इन्द्र दस्यून्विशो दासीरकृणोरप्रशस्ताः।
अबाधेथाममृणतं नि शत्रूनविन्देथामपचितिं वधत्रैः ॥४॥

हे इन्द्रदेव ! तिमीले दस्युलाई पछार्‍यौ र हीन भावना भएकाहरूलाई निन्दित गरायौ। हे इन्द्रदेव र सोमदेव ! तिमीहरू दुवै शत्रुलाई रोक्दछौ र हतियारले विनाश गर्दछौ अनि त्यसैबाट सम्मान प्राप्त गर्दछौ।

एवा सत्यं मघवाना युवं तदिन्द्रश्च सोमोर्वमश्व्यं गोः।
आदर्दृतमपिहितान्यश्ना रिरिचथुः क्षाश्चित्ततृदाना ॥५॥

हे सोमदेव ! तिमी र इन्द्रदेवले महान् अश्व र गाईको बथान दान दिएका थियौ भन्ने कुरा साँचो हो। हे धनवान् सोम र इन्द्रदेव ! तिमीहरू दुवै ढुङ्गाले छेकिएका गाईको बथान र धर्तीलाई आआफ्ना बलले मुक्त गराएका थियौ अनि शत्रु मारेका थियौ।

[सूक्त - २९]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**आ नः स्तुत उप वाजेभिरूती इन्द्र याहि हरिभिर्मन्दसानः।**
**तिरश्चिदर्यः सवना पुरूण्याङ्गूषेभिर्गृणानः सत्यराधाः ॥१॥**

हे इन्द्रदेव ! याजकलाई संरक्षण प्रदान गर्नका लागि अन्नले सम्पन्न हाम्रा अनेकौं यज्ञमा प्रशंसित हुँदै घोडामा आऊ। तिमी आनन्दमय, स्वामी, स्तोत्रले प्रशंसित र अविनाशी धनले सम्पन्न छौ।

**आ हि ष्मा याति नर्यश्चिकित्वान्हूयमानः सोतृभिरुप यज्ञम्।**
**स्वश्वो यो अभीरुर्मन्यमानः सुष्वाणेभिर्मदति सं ह वीरैः ॥२॥**

मानिसका लागि हितकारी र सर्वज्ञाता हे इन्द्रदेव ! सोम यज्ञ गर्नेले बोलाएपछि हाम्रा यज्ञका नजिकै आऊ। असल अश्वले सम्पन्न, निर्भय र सोमयज्ञ गर्नेबाट प्रशसित इन्द्रदेव मरुतहरूसँगै रमाउँछन्।

**श्रावयेदस्य कर्णा वाजयध्यै जुष्टामनु प्र दिशं मन्दयध्यै।**
**उद्वावृषाणो राधसे तुविष्मान्करन्न इन्द्रः सुतीर्थाभयं च ॥३॥**

हे मानिस हो ! इन्द्रदेवलाई बलियो बनाउनका लागि र समस्त दिशा खुसी गर्नका लागि उनका कानमा राम्रो मन्त्र सुनाऊ। सोमरसले सम्पन्न, शक्तिशाली इन्द्रदेवले हामी मानिसलाई ऐश्वर्य प्रदान गर्नका लागि ठूला तीर्थलाई डरबाट मुक्त गराऊन्।

**अच्छा यो गन्ता नाधमानमूती इत्था विप्रं हवमानं गृणन्तम्।**
**उप त्मनि दधानो धुर्याशून्त्सहस्राणि शतानि वज्रबाहुः ॥४॥**

हातमा वज्र लिएका, सयौं वा हजारौं राम्रो कुद्ने अश्वलाई त्राणका लागि रथमा बाँधेर, सुरक्षाका लागि याचना गर्दै सबैले बोलाउने, सबैले प्रार्थना गर्ने र मेधावी इन्द्रदेव याजकका नजिकै जान्छन्।

**त्वोतासो मघवन्निन्द्र विप्रा वयं ते स्याम सूरयो गृणन्तः।**
**भेजानासो बृहद्दिवस्य राय आकाय्यस्य दावने पुरुक्षोः ॥५॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! हामी मानिस तिम्रो स्तुति गर्दछौं। हामी ज्ञानी र स्तुति गर्नेहरू तिमीबाट संरक्षित छौं। तिमी अत्यन्त तेजसम्पन्न, प्रार्थना गर्न योग्य र अन्नसम्पन्न छौ। ऐश्वर्य प्रदान गर्ने बेलामा हामी मानिसहरू तिमीलाई प्रार्थना गर्दछौं।

[सूक्त - ३०]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र उषा। छन्द - गायत्री अनुष्टुप्।

**नकिरिन्द्र त्वदुत्तरो न ज्यायाँ अस्ति वृत्रहन्। नकिरेवा यथा त्वम् ॥१॥**

हे शत्रुसंहारक इन्द्रदेव ! तिमीभन्दा महान् अर्को कोही पनि छैन। तिमीजत्तिको अर्को कुनै देवता पनि छैन।

**सत्रा ते अनु कृष्टयो विश्वा चक्रेव वावृतुः। सत्रा महाँ असि श्रुतः ॥२॥**

हे इन्द्रदेव ! सबैतिर व्याप्त चक्रले गाडीको अनुसरण गरेझैं समस्त प्रजाले तिम्रो अनुसरण गर्दछन्। तिमी साँच्चै नै महान् गुणले विख्यात छौ।

**विश्वे चनेदना त्वा देवास इन्द्र युयुधुः। यदहा नक्तमातिरः ॥३॥**

हे इन्द्रदेव ! विजयको अभिलाषा गर्ने समस्त देवताले शक्तिका रूपमा तिम्रो सहयोग प्राप्त गरेर असुरसित युद्ध गरेका थिए। तिमीले शत्रुका सबै कुरा विनाश गरेका थियौ।

**यत्रोत बाधितेभ्यश्चक्रं कुत्साय युध्यते। मुषाय इन्द्र सूर्यम् ॥४॥**

हे इन्द्रदेव ! त्यस युद्धमा लडेका कुत्स र उनका सहयोगीलाई विनाश गर्न खोज्ने सूर्यका रथको पाङ्ग्रो तिमीले उचालेका थियौ र आफ्ना भक्तलाई जोगाएका थियौ।

**यत्र देवाँ ऋघायतो विश्वाँ अयुध्य एक इत्। त्वमिन्द्र वनूँरहन् ॥५॥**

हे इन्द्रदेव ! त्यस युद्धमा देवताका अवरोधक सबै असुरसित तिमीले एक्लै लडाइँ गरेका थियौ र हिंसकहरूको संहार गरेका थियौ।

**यत्रोत मर्त्याय कमरिणा इन्द्र सूर्यम्। प्रावः शचीभिरेतशम् ॥६॥**

हे इन्द्रदेव ! सङ्ग्राममा तिमीले एतश ऋषिका लागि सूर्यमाथि आक्रमण गरेका थियौ। त्यस सङ्ग्राममा लडाइँ गरेर तिमीले एतशको सुरक्षा गरेका थियौ।

किमादुतासि वृत्रहन्मघवन्मन्युमत्तमः। अत्राह दानुमातिरः ॥७॥
वृत्र संहार गर्ने ऐश्वर्यशाली हे इन्द्रदेव ! तिमी अत्यधिक क्रोधित भएका थियौ ? यस आकाशमा तिमीले दानुका पुत्र वृत्रलाई संहार गरेका थियौ।

एतद्घेदुत वीर्यमिन्द्र चकर्थ पौंस्यम्।
स्त्रियं यद्दुर्हणायुवं वधीर्दुहितरं दिवः ॥८॥
हे इन्द्रदेव ! तिमीले बलले सम्पन्न भएर पुरुषार्थ गरेका थियौ। सूर्यदेवले द्युलोककी पुत्री उषाको नाश गरेझैं तिमी विशाल शत्रुसेनाको संहार गर्दछौ।

दिवश्चिद्घा दुहितरं महान्महीयमानाम्। उषासमिन्द्र सं पिणक् ॥९॥
हे महान् इन्द्रदेव ! सूर्यदेवले उषालाई छिन्नभिन्न गराएझैं तिमीले विशाल शत्रुसेना छरपस्ट गरायौ।

अपोषा अनसः सरत्संपिष्टादह बिभ्युषी। नि यत्सीं शिश्नथद्वृषा ॥१०॥
बलशाली इन्द्रदेवले उषादेवीको रथ भत्काएपछि डरले थर्कमान भएकी उषादेवी भत्किएका रथबाट पर पुगेपछि मात्रै देखा परेकी थिइन्।

एतदस्या अनः शये सुसम्पिष्टं विपाश्या। ससार सीं परावतः ॥११॥
इन्द्रदेवले भत्काइदिएको उषादेवीको रथ विपाशा नदीका किनारमा पछारियो र त्यस ठाउँबाट उषादेवी पर भागेकी थिइन्।

उत सिन्धुं विबाल्यं वितस्थानामधि क्षमि। परि ष्ठा इन्द्र मायया ॥१२॥
हे इन्द्रदेव ! सबै जल र परिपूर्ण भरिएर वेगसित बग्ने सिन्धु नदीलाई तिमीले आफ्ना बुद्धिले धर्तीका सबै ठाउँमा स्थापित गरायौ।

उत शुष्णस्य धृष्णुया प्र मृक्षो अभि वेदनम्। पुरो यदस्य संपिणक् ॥१३॥
हे वर्सने इन्द्रदेव ! शुष्ण नामका असुरको नगर विदीर्ण गराएपछि तिमीले उसको ऐश्वर्य पनि अपहरण गरेका थियौ।

उत दासं कौलितरं बृहतः पर्वतादधि। अवाहन्निन्द्र शम्बरम् ॥१४॥
हे इन्द्रदेव ! कुलितरका पुत्रलाई विनाश गर्ने शम्बरलाई तिमीले विशाल पर्वतका टुप्पाबाट तल मुन्ट्याएर मारेका थियौ।

उत दासस्य वर्चिनः सहस्राणि शतावधीः अधि पञ्च प्रधींरिव ॥१५॥
हे इन्द्रदेव ! चक्रको अरजस्तै किसिमले सङ्गठित भएर रहने वर्चस्वी दासका शत्रुका पाँच लाख सैनिकलाई तिमीले विनाश गरिदियौ।

उत त्यं पुत्रमग्रुवः परावृक्तं शतक्रतुः। उक्थेष्विन्द्र आभजत् ॥१६॥
सयौं यज्ञ सम्पन्न गरेका इन्द्रदेवले अग्रुका पुत्र परावृक्तलाई स्तोत्र पाठ गर्न सहभागी हुन सक्ने बनाए।

उत त्या तुर्वशायदू अस्नातारा शचीपतिः। इन्द्रो विद्वाँ अपारयत् ॥१७॥
ययातिका शापले पतित, विख्यात शासक यदु र तुर्वशलाई ज्ञानी शचीपति इन्द्रदेवले अभिषेकका लागि योग्य बनाए।

उत त्या सद्य आर्या सरयोरिन्द्र पारतः। अर्णाचित्ररथावधीः ॥१८॥
हे इन्द्रदेव ! सरयु नदीका किनारमा बस्ने अर्ण र चित्ररथ नामका आर्य शासकलाई तिमीले तत्काल मारिदिएका थियौ।

अनु द्वा जहिता नयोऽन्धं श्रोणं च वृत्रहन्। न तत्ते सुम्नमष्टवे ॥१९॥
हे वृत्र विनाश गर्ने इन्द्रदेव ! समाजले परित्याग गरेका अन्धा र पङ्गुलाई तिमीले अनुकूल मार्गमा ल्याएका थियौ। तिमीले प्रदान गरेको सुख हटाउन कसैले सक्दैन।

शतमश्मन्मयीनां पुरामिन्द्रो व्यास्यत्। दिवोदासाय दाशुषे ॥२०॥
ढुङ्गाले बनाएका शत्रुका सयौं सहर इन्द्रदेवले हवि प्रदान गर्ने दिवोदासलाई दिए।

अस्वापयद्दभीतये सहस्रा त्रिंशतं हथैः। दासानामिन्द्रो मायया ॥२१॥
इन्द्रदेवले नै दभीतिको हितका लागि आफ्ना सामर्थ्यले असुरका तीस हजार वीरलाई हतियारले मारेर पसारेका थिए।

स घेदुतासि वृत्रहन्त्समान इन्द्र गोपतिः। यस्ता विश्वानि चिच्युषे ॥२२॥
हे इन्द्रदेव ! तिमी सबै शत्रु थर्कमान गराउँछौ। हे वृत्र संहार गर्ने इन्द्रदेव ! तिमी गाईको रक्षा गर्दछौ। तिमी समस्त याजकहरूसित समान व्यवहार गर्दछौ।

उत नून यदिन्द्रियं करिष्या इन्द्र पौंस्यम्। अद्या नकिष्टदा मिनत् ॥२३॥
हे इन्द्रदेव ! तिमीले आफ्ना इन्द्रियको बल र पराक्रम देखायौ। त्यो बल कसैले पनि विनाश गर्न सक्दैन।

वामंवामं त आदुरे देवो ददात्वर्यमा।
वामं पूषा वामं भगो वामं देवः करूळती ॥२४॥
शत्रु संहार गर्ने हे इन्द्रदेव ! अर्यमा देवताले तिमीलाई अति सुन्दर ऐश्वर्य प्रदान गरून्। दाँतविनाका पूषा र भग देवताले तिमीलाई त्यो सुन्दर ऐश्वर्य प्रदान गरून्।

[सूक्त - ३१]

ऋषि - वामदेव गौतम। देवता - इन्द्र। छन्द - गायत्री।

कया नश्चित्र आ भुवदूती सदावृधः सखा। कया शचिष्ठया वृता ॥१॥
निरन्तर गतिशील हे इन्द्रदेव ! तिमी कुनकुन तृप्तिकारक पदार्थ अर्पण गर्दा र कस्ता पूजाविधिले प्रसन्न हुन्छौ ? तिमी कुन दिव्य शक्तिका सहायताले हाम्रो सहयोग गर्छौ ?

कस्त्वा सत्यो मदानां मंहिष्ठो मत्सदन्धसः। दृळहा चिदारुजे वसु ॥२॥
सत्यनिष्ठलाई आनन्द प्रदान गर्नेहरूमा सोम सर्वोपरि छ, किनकि हे इन्द्रदेव ! तिमी डराउँदा शत्रुको ऐश्वर्य नाश गर्न यसले प्रेरणा दिन्छ।

अभी षु णः सखीनामविता जरितॄणाम्। शतं भवास्यूतिभिः ॥३॥
स्तुतिले प्रसन्न गर्ने आफ्ना मित्रका रक्षक हे इन्द्रदेव ! हरेक किसिमले हाम्रो रक्षा गर्नका लागि तिमी उच्च कोटिको तयारीका साथ प्रस्तुत होऊ।

अभी न आ ववृत्स्व चक्रं न वृत्तमर्वतः। नियुद्भिश्चर्षणीनाम् ॥४॥
हे इन्द्रदेव ! हामी याजक तिम्रो अनुसरण गर्दछौं। हामी याजकका प्रार्थनाले तिमी हर्षित भएर हामीकहाँ गोलो पाङ्ग्रोझैँ आऊ।

प्रवता हि क्रतूनामा हा पदेव गच्छसि। अभक्षि सूर्ये सचा ॥५॥
हे इन्द्रदेव ! तिमी यज्ञमण्डपमा आफ्नो स्थान पत्ता लगाएर त्यहाँ बस्दछौ। हामी सूर्यदेवसँगै तिम्रो पनि उपासना गर्दछौं।

सं यत्त इन्द्र मन्यवः सं चक्राणि दधन्विरे। अध त्वे अध सूर्ये ॥६॥
हे इन्द्रदेव ! हामीले गरेको प्रार्थना चक्रजस्तो भएर तिमीतिर गति गर्दछ। त्यो प्रार्थना सबैभन्दा पहिले तिम्रा नजिकमा पुग्दछ र त्यसपछि मात्रै सूर्यदेवतिर जान्छ।

उत स्मा हि त्वामाहुरिन्मघवानं शचीपते। दातारमविदीधयुम् ॥७॥
शक्तिका स्वामी हे इन्द्रदेव ! स्तोताहरू तिमीलाई ऐश्वर्यवान्, धनप्रदायक र तेजस्वी भन्दछन्।

उत स्मा सद्य इत्परि शशमानाय सुन्वते। पुरू चिन्मंहसे वसु ॥८॥
हे इन्द्रदेव ! स्तुति गर्ने र सोम पेल्नेलाई तिमी चाँडै नै मनग्गे ऐश्वर्य प्रदान गर्दछौ।

नहि ष्मा ते शतं चन राधो वरन्त आमुरः। न च्यौत्नानि करिष्यतः ॥९॥
हे इन्द्रदेव ! तिम्रो सयकडौं खालको ऐश्वर्य हिंसा गर्ने शत्रुले प्राप्त गर्न सक्दैनन् र शत्रु विनाश गर्ने तिम्रो सामर्थ्य रोक्न पनि सक्दैनन्।

अस्माँ अवन्तु ते शतमस्मान्त्सहस्रमूतयः। अस्मान्विश्वा अभिष्टयः ॥१०॥
हे इन्द्रदेव ! सयौं वा हजारौं खालका रक्षण साधन र प्रेरणाले हाम्रो सुरक्षा गर।

अस्माँ इहा वृणीष्व सख्याय स्वस्तये। महो राये दिवित्मते ॥११॥
हे इन्द्रदेव ! हामीलाई आफ्ना मित्रताको छत्रछायामा राखेर हित गर र याजकलाई तेजस्वी वैभव प्रदान गर।

अस्माँ अविड्ढि विश्वहेन्द्र राया परीणसा। अस्मान्विश्वाभिरूतिभिः ॥१२॥
हे इन्द्रदेव ! आफ्नो तेजस्वी धन र सम्पूर्ण रक्षण साधनले प्रत्येक दिन हाम्रो सुरक्षा गर।

अस्मभ्यं तॉं अपा वृधि व्रजाँ अस्तेव गोमतः । नवाभिरिन्द्रोतिभिः ॥१३॥
हे इन्द्रदेव ! वीर मानिसले घरको ढोका उघारेझैं हाम्रा लागि गाईको गोठ खुला गर।

अस्माकं धृष्णुया रथो द्युमाँ इन्द्रानपच्युतः । गव्युरश्वयुरीयते ॥१४॥
हे इन्द्रदेव ! तिमी हाम्रा शत्रु परास्त गराउने, अत्यधिक तेजस्वी, विनाश नहुने र गाईले युक्त छौ। अश्वयुक्त रथमा सर्वत्र गमन गर्दछौ। त्यसै रथले याजकलाई सुरक्षा गर।

अस्माकमुत्तमं कृधि श्रवो देवेषु सूर्य । वर्षिष्ठं द्यामिवोपरि ॥१५॥
सबैलाई प्रेरणा प्रदान गर्ने हे सूर्यदेव ! अत्यन्त तेजस्वी द्युलोकलाई माथि स्थापना गरेझैं देवताहरूका बीचमा हाम्रा यज्ञलाई तिमी महानता प्रदान गर।

[सूक्त - ३२]

ऋषि - वामदेव गौतम । देवता - इन्द्र इन्द्राश्व । छन्द - गायत्री ।

आ तू न इन्द्र वृत्रहन्नस्माकमर्धमा गहि । महान्महीभिरूतिभिः ॥१॥
हे वृत्र हनन गर्ने इन्द्रदेव ! महान् संरक्षणका साधनसँगै तिमी हामीकहाँ आऊ।

भृमिश्चिद्घासि तूतुजिरा चित्र चित्रिणीष्वा । चित्रं कृणोष्यूतये ॥२॥
हे इन्द्रदेव ! हामी पुरुषार्थ गर्नेलाई तिमी समृद्ध गराउँछौ। हे अद्भुत शक्तिशाली इन्द्रदेव ! अद्भुत कर्म गर्ने मानिसलाई सुरक्षा गर्न विलक्षण यत्न प्रदान गर्दछौ।

दभ्रेभिश्चिच्छशीयांसं हंसि व्राधन्तमोजसा । सखिभिर्ये त्वे सचा ॥३॥
हे इन्द्रदेव ! तिमीसित रहने याजक मित्रका सहयोगले उच्छृङ्खल व्यवहार देखाउने ठूला शत्रुलाई पनि तिमी विनाश गर्दछौ।

वयमिन्द्र त्वे सचा वयं त्वाभि नोनुमः । अस्माँ अस्माँ इदुदव ॥४॥
हे इन्द्रदेव ! हामी तिमीसँग रहन र तिम्रो प्रार्थना गर्न चाहन्छौं। हामीलाई विशेष रूपले संरक्षण प्रदान गर।

स नश्चित्राभिरद्रिवोऽनवद्याभिरूतिभिः । अनाधृष्याभिरा गहि ॥५॥
हे वज्रधारी इन्द्रदेव ! अनेकौं किसिमका प्रार्थनीय र शत्रुबाट परास्त गर्न नसकिने खालका रक्षण साधनले सम्पन्न भएर हामीकहाँ आऊ।

भूयामो षु त्वावतः सखाय इन्द्र गोमतः । युजो वाजाय घृष्वये ॥६॥
हे इन्द्रदेव ! हामी पनि तिमीजस्तै गाईका धनी व्यक्तिका मित्र बनौं। मनग्गे अन्नरूपी धनका निम्ति तिमीसँग हामी भेटघाट गर्दछौं।

त्वं ह्येक ईशिष इन्द्र वाजस्य गोमतः । स नो यन्धि महीमिषम् ॥७॥
हे इन्द्रदेव ! गाईबाट उत्पन्न भएका अन्नमाथि तिमी एक्लै शासन गर्दछौ। हामीलाई मनग्गे अन्न प्रदान गर।

न त्वा वरन्ते अन्यथा यद्दित्ससि स्तुतो मघम् । स्तोतृभ्य इन्द्र गिर्वणः ॥८॥
हे प्रार्थना गर्न योग्य इन्द्रदेव ! तिमी प्रशंसित हुँदा प्रशंसा गर्नेहरूलाई ऐश्वर्य प्रदान गर्ने विचार गर्दछौ। त्यस बेला कसैले केही गरी पनि तिमीलाई रोक्न सक्दैन।

अभि त्वा गोतमा गिरानूषत प्र दावने । इन्द्र वाजाय घृष्वये ॥९॥
हे इन्द्रदेव ! गौतम ऋषि आफ्ना प्रार्थनाले तिमीलाई समृद्ध गराउँछन् र असल अन्न दान गर्नका लागि प्रार्थना गर्दछन्।

प्र ते वोचाम वीर्या३ या मन्दसान आरुजः । पुरो दासीरभीत्य ॥१०॥
हे इन्द्रदेव ! सोमरस पान गरेकाले खुसी भएर तिमीले दासका सहरमाथि आक्रमण गरेर लथालिङ्ग गरायौ। त्यसैले हामी तिम्रो त्यस शौर्यको वर्णन गर्दछौं।

ता ते गृणन्ति वेधसो यानि चकर्थ पौंस्या । सुतेष्विन्द्र गिर्वणः ॥११॥
हे प्रशंसनीय इन्द्रदेव ! सोमरस तयार गर्ने ज्ञानीहरू तिम्रा शौर्यको प्रशंसा गर्दछन्।

अवीवृधन्त गोतमा इन्द्र त्वे स्तोमवाहसः । ऐषु धा वीरवद्यशः ॥१२॥
हे इन्द्रदेव ! प्रशंसा गर्ने गौतम ऋषिले तिम्रो कीर्ति बलियो पार्दछन्। तिनलाई सन्तानले सम्पन्न गरेर अन्न प्रदान गर।

यच्चिद्धि शश्वतामसीन्द्र साधारणस्त्वम्। तं त्वा वयं हवामहे ॥१३॥
हे इन्द्रदेव ! यद्यपि सबै याजकका लागि तिमी सहजै उपलब्ध हुन्छौ, तापनि हामी स्तुति गर्नेहरू तिमीलाई विशेष रूपले बोलाउँछौं।

अर्वाचीनो वसो भवास्मे सु मत्स्वान्धसः। सोमानामिन्द्र सोमपाः ॥१४॥
सबैलाई वासको व्यवस्था गरेर सोमपान गर्ने हे इन्द्रदेव ! हामी याजकका सामु तिमी आऊ र सोमरस पान गरेर खुसी होऊ।

अस्माकं त्वा मतीनामा स्तोम इन्द्र यच्छतु। अर्वागा वर्तया हरी ॥१५॥
हे इन्द्रदेव ! हामी तिम्रो स्तुति गर्दछौं। हाम्रा स्तुतिले तिमीलाई यहाँ ल्याउन्। तिमी आफ्नो अश्व हामीतिर प्रेरित गर।

पुरोडाशं च नो घसो जोषयासे गिरश्च नः। वधूयुरिव योषणाम् ॥१६॥
हे इन्द्रदेव ! हाम्रो पुरोडाशरूपी अन्न खाऊ। स्त्रीको रहर भएका पुरुषले आइमाईका कुरा राम्ररी सुनेझैं तिमी पनि हाम्रो प्रार्थना सुन।

सहस्रं व्यतीनां युक्तानामिन्द्रमीमहे। शतं सोमस्य खार्यः ॥१७॥
हामी स्तुति गर्ने मानिसहरू द्रुतगामी, कुशल प्रशिक्षित र शत्रु परास्त गर्ने हजारौं अश्व इन्द्रदेवसित माग्दछौं। त्यसबाहेक सयौं सङ्ख्यामा खारी नामका भाँडा माग्दछौं।

सहस्रा ते शता वयं गवामा च्यावयामसि। अस्मत्रा राध एतु ते ॥१८॥
हे इन्द्रदेव ! तिम्रा हजारौं गाई हामी पाउँछौं। तिम्रो धन हाम्रा नजिकै होस्।

दश ते कलशानां हिरण्यानामधीमहि। भूरिदा असि वृत्रहन् ॥१९॥
हे इन्द्रदेव ! हामी सुनले भरिएका दस वटा कलश प्राप्त गर्दछौं। हे वृत्रहन्ता इन्द्रदेव ! तिमी मनग्गे मात्रामा दान गर्दछौ।

भूरिदा भूरि देहि नो मा दभ्रं भुर्या भर। भूरि घेदिन्द्र दित्ससि ॥२०॥
हे प्रचुर दान गर्ने इन्द्रदेव ! हामीलाई मनग्गे ऐश्वर्य दान गर। हामीलाई थोरै होइन, धेरै मात्रामा धन प्रदान गर। किनभने तिमी प्रचुर ऐश्वर्य प्रदान गर्ने रहर गर्दछौ।

भूरिदा ह्यसि श्रुतः पुरुत्रा शूर वृत्रहन्। आ नो भजस्व राधसि ॥२१॥
हे वृत्रहन्ता शूरवीर इन्द्रदेव ! तिमी अत्यधिक ऐश्वर्य प्रदान गर्ने रूपमा प्रसिद्ध छौ। तिमी आफ्नो ऐश्वर्यमा हामीलाई पनि सहभागी बनाऊ।

प्र ते बभ्रू विचक्षण शंसामि गोषणो नपात्। माभ्यां गा अनु शिश्रथः ॥२२॥
मेधावी, शत्रुनाशक र गाईका पालक हे इन्द्रदेव ! तिम्रा खैरा रङ्गका अश्वको हामी प्रशंसा गर्दछौं। यी अश्वले तिमी हाम्रा गाई विनाश नगर।

कनीनकेव विद्रधे नवे द्रुपदे अर्भके। बभ्रू यामेषु शोभेते ॥२३॥
हे इन्द्रदेव ! तिम्रा खैरा रङ्गका अश्व बलियो काठका पुतलीजस्तै यज्ञमा शोभायमान छन्।

अरं म उस्रयाम्णेऽरमनुस्रयाम्णे। बभ्रू यामेष्वस्रिधा ॥२४॥
हे इन्द्रदेव ! हामी गोरु नारिएका रथमा यात्रा गरौं वा पैदल नै, त्यस बेला तिम्रा खैरा रङ्गका हिंसाविनाका अश्व हाम्रा लागि हितकारी होऊन्।

[सूक्त - ३३]

ऋषि - वामदेव गौतम। देवता - ऋभुगण। छन्द - त्रिष्टुप्।

प्र ऋभुभ्यो दूतमिव वाचमिष्य उपस्तिरे श्वैतरीं धेनुमीळे।
ये वातजूतास्तरणिभिरेवैः परि द्यां सद्यो अपसो बभूवुः ॥१॥
वायुजस्तो वेग भएका र उपकारी काम गर्ने ऋभुहरू आफ्ना चतुर अश्वले शीघ्र नै द्युलोकमा व्याप्त हुन्छन्। ऋभुका लागि हामी यजमान सन्देशवाहकजस्तो प्रार्थना प्रेरित गर्दछौं। सोमरस उत्कृष्ट बनाउनका लागि हामी उनीहरूसित दुधालु गाई माग्दछौं।

यदारमक्रन्नृभवः पितृभ्यां परिविष्टी वेषणा दंसनाभिः।
आदिद्देवानामुप सख्यमायन्धीरासः पुष्टिमवहन्मनायै ॥२॥
ऋभुहरूले आफ्ना मातापिताको सेवासुसार गरेर महानताको परिचय दिएपछि असल कर्मले

स्वयंलाई बलशाली पनि बनाए। उनीहरूले इन्द्र आदि देवतासितको बन्धुता प्राप्त गरे। त्यसपछि मेधावी ऋभुहरूले आफ्नो मन बलियो बनाए।

पुनर्ये चक्रुः पितरा युवाना सना यूपेव जरणा शयाना।
ते वाजो विभ्वाँ ऋभुरिन्द्रवन्तो मधुप्सरसो नोऽवन्तु यज्ञम् ॥३॥

मकाएको मौलोजस्तै जीर्ण भएर ढलेका मातापितालाई ऋभुहरूले सधैंका लागि तन्नेरी बनाए। इन्द्रदेवका कृपाले कृतार्थ भएपछि मधुर सोमरस पान गरेर वाज, विभु र ऋभुले हाम्रा यज्ञको सुरक्षा गरून्।

यत्संवत्समृभवो गामरक्षन्यत्संवत्समृभवो मा अपिंशन्।
यत्संवत्समभरन्भासो अस्यास्ताभिः शमीभिरमृतत्वमाशुः ॥४॥

ऋभुहरूले एक वर्ष मरन्च्यासे गाईको सेवा गरे, एक वर्ष हरेक अङ्गको सह्मार गरेर सुन्दर बनाए र एक वर्ष तेज स्थापित गराए। यिनै काम गरेर अमरता प्राप्त गरे।

ज्येष्ठ आह चमास द्वा करेति कनीयान्त्रीन्कृणवामेत्याह।
कनिष्ठ आह चतुरस्करेति त्वष्ट ऋभवस्तत्पनयद्वचो वः ॥५॥

जेठा ऋभुले हामी एउटा चमस दुई भाग लगाउँछौं भने, त्यसपछिका ऋभुले चार भाग लगाउँछौं भने। हे ऋभुहरू हो ! त्वष्टा देवताले तिम्रा यी वचनको प्रशंसा गरे।

सत्यमूचुर्नर एवा हि चक्रुरनु स्वधामृभवो जग्मुरेताम्।
विभ्राजमानांश्चमसाँ अहेवावेनत्त्वष्टा चतुरो ददृश्वान् ॥६॥

मानिसको रूपमा रहेका ऋभुहरूले साँच्चै भनेका थिए, किनभने उनीहरूले जसो भने उसै गरे। त्यसपछि ऋभुहरूले हव्य ग्रहण गरे। दिनको उज्यालोजस्तै प्रकाशयुक्त चार चमस त्वष्टादेवले देखेर प्रसन्नतापूर्वक स्वीकार गरे।

द्वादश द्यून्यदगोह्यस्यातिथ्ये रणन्नृभवः ससन्तः।
सुक्षेत्राकृण्वन्ननयन्त सिन्धून्धन्वातिष्ठन्नोषधीर्निम्नमापः ॥७॥

ऋभुहरू द्युलोकका बाह्र भागमा आनन्दसित निवास गरेर खेत असल बनाए र नदीलाई प्रेरित गरे। जलरहित स्थानमा औषधि उब्जाए र ओरालोतिर जल बगाए।

रथं ये चक्रुः सुवृतं नरेष्ठां ये धेनुं विश्वजुवं विश्वरूपाम्।
त आ तक्षन्त्वृभवो रयिं नः स्ववसः स्वपसः सुहस्ताः ॥८॥

ऋभुहरूले राम्ररी कसेर मानिस चढ्न हुने गरी रथ बनाए। समस्त जगत्लाई प्रेरित गर्ने र अनकौं रूप भएका गाई उत्पन्न गरे। अन्नका धनी र असल हात भएका ऋभुहरूले हामीलाई धन दिऊन्।

अपो ह्येषामजुषन्त देवा अभि क्रत्वा मनसा दीध्यानाः।
वाजो देवानामभवत्सुकर्मेन्द्रस्य ऋभुक्षा वरुणस्य विभ्वा ॥९॥

देवताले ऋभुहरूको रथ निर्माण आदि कामलाई वरदानका रूपमा प्रसन्न भएर स्वीकार गरे। असल कर्म गर्ने वाज देवताका प्रियपात्र भए भने जेठा ऋभु इन्द्रदेवका प्रियपात्र हुन् र विभु वरुणदेवका प्रियपात्र बने।

ये हरी मेधयोक्था मदन्त इन्द्राय चक्रुः सुयुजा ये अश्वा।
ते रायस्पोषं द्रविणान्यस्मे धत्त ऋभवः क्षेमयन्तो न मित्रम् ॥१०॥

ऋभुहरूले स्तोत्रबाट प्रसन्न भएर आफ्ना प्रज्ञाले बलिया अश्व बनाए। इन्द्रदेवका रथमा सजिलोसित नारिने अश्व तयार भए। मित्रजस्ता तिनै ऋभुहरू कल्याणको कामना गर्ने हामी मानिसलाई ऐश्वर्य, पुष्टि र गाई आदि धन प्रदान गरून्।

इदाहः पीतिमुत वो मदं धुर्न ऋते श्रान्तस्य सख्याय देवाः।
ते नूनमस्मे ऋभवो वसूनि तृतीये अस्मिन्त्सवने दधात ॥११॥

हे ऋभु हो ! देवताले तिमीहरूलाई तेस्रो सवनमा सोमरस र खुसी प्रदान गरे। तपस्या नै नगरीकन देवताले मित्रता गर्दैनन्। हे ऋभुहरू हो ! हामीजस्ता मानिसलाई तिमी यस तेस्रो सवनमा निश्चित रूपमा नै ऐश्वर्य प्रदान गर।

[सूक्त - ३४]

ऋषि - वामदेव गौतम। देवता - ऋभुगण। छन्द - त्रिष्टुप्।

**ऋभुर्विभ्वा वाज इन्द्रो नो अच्छेमं यज्ञं रत्नधेयोप यात।**
**इदा हि वो धिषणा देव्यह्नामधात्पीतिं सं मदा अग्मता वः ॥१॥**

हे ऋभु, विभु, वाज र इन्द्रदेव ! हामीलाई रत्न प्रदान गर्नका लागि हाम्रा यज्ञमण्डपमा आओ। आज दिउँसो तिमीहरू सबैलाई सन्तुष्ट गर्नका लागि स्नेहपूर्वक स्तुतिगान गर्दै सोमरस प्रस्तुत गरिएको छ। यो हर्षप्रदायक सोमरस तिमीहरूसँगै आबद्ध रहोस्।

**विदानासो जन्मनो वाजरत्ना उत ऋतुभिर्ऋभवो मादयध्वम्।**
**सं वो मदा अग्मत सं पुरन्धिः सुवीरामस्मे रयिमेरयध्वम् ॥२॥**

हे अन्नले सुशोभित ऋभु हो ! तिमीहरू जीवको जन्मका विषयमा जानेर सबै ऋतुमा आनन्द प्राप्त गर। हर्षप्रदायक सोमरस र असल बुद्धि तिमीहरूलाई सधैं प्राप्त होस्। तिमीहरू असल सन्तानले सम्पन्न ऐश्वर्य हामीतिर प्रेरित गर।

**अयं वो यज्ञ ऋभवोऽकारि यमा मनुष्वत्प्रदिवो दधिध्वे।**
**प्र वोऽच्छा जुजुषाणासो अस्थुरभूत विश्वे अग्रियोत वाजाः ॥३॥**

हे ऋभु हो ! यो यज्ञ तिमीहरू सबैका लागि गरिँदै छ। तिमीहरू तेजस्वी व्यक्तिजस्तै यो यज्ञ ग्रहण गर। हर्ष प्रदान गर्ने सोमरस तिमीहरूतिरै प्रेरित हुन्छ। हे बलशाली ऋभु हो ! तिमीहरू सबै असल छौ।

**अभूदु वो विधते रत्नधेयमिदा नरो दाशुषे मर्त्याय।**
**पिबत वाजा ऋभवो ददे वो महि तृतीयं सवनं मदाय ॥४॥**

हे असल नेताजस्ता ऋभु हो ! तिमीहरूका रत्न आदि धन सबै सेवासुसार गर्ने र आहुति प्रदान गर्ने यजमानकै लागि होऊन्। हे बलवान् ऋभु हो ! हामी तेस्रो सवनमा खुसी हुने गरी मनग्गे सोमरस प्रदान गर्दछौं, त्यसैले तिमीहरू त्यो सबै पान गर।

**आ वाजा यातोप न ऋभुक्षा महो नरो द्रविणसो गृणानाः।**
**आ वः पीतयोऽभिपित्वे अह्नामिमा अस्तं नवस्व इव ग्मन् ॥५॥**

हे बलशाली नेता ऋभु हो ! अत्यधिक ऐश्वर्यवान्का रूपमा विख्यात छौ, हामीकहाँ आओ। भर्खर ब्याएको लैनो गाई घरतिर कुदेझैं सोमरस तिमीहरूतिर आउँछ।

**आ नपातः शवसो यातनोपेमं यज्ञं नमसा हूयमानाः।**
**सजोषसः सूरयो यस्य च स्थ मध्वः पात रत्नधा इन्द्रवन्तः ॥६॥**

हे बलशाली ऋभु हो ! स्तुतिले बोलाउँदा तिमीहरू यस यज्ञमण्डपमा आओ। तिमीहरू इन्द्रदेवका मित्रका रूपमा रहेका मेधावी र सम्बन्धी हौ। इन्द्रदेवसँगै रहेर रत्न प्रदान गर्दै मिठो सोमरस पान गर।

**सजोषा इन्द्र वरुणेन सोमं सजोषाः पाहि गिर्वणो मरुद्भिः।**
**अग्रेपाभिर्ऋतुपाभिः सजोषा ग्नास्पत्नीभी रत्नधाभिः सजोषाः ॥७॥**

हे इन्द्रदेव ! तिमी वरुणदेव र मरुत्हरूसँग प्रेमपूर्वक सोमपान गर। सबैभन्दा पहिले ऋतुअनुसार सोमरस पान गर्ने देवता र असल धन भएका उनका पत्नीहरूसँग तिमी सोमपान गर।

**सजोषस आदित्यैर्मादयध्वं सजोषस ऋभवः पर्वतेभिः।**
**सजोषसो दैव्येना सवित्रा सजोषसः सिन्धुभी रत्नधेभिः ॥८॥**

हे ऋभु हो ! तिमीहरू आदित्य र पर्वतसँगै प्रेमपूर्वक खुसीयाली मनाओ। तिमीहरू देवताका हितैषि सवितादेव र रत्न प्रदान गर्ने सागरसँगै रमाओ।

**ये अश्विना ये पितरा य ऊती धेनुं ततक्षुर्ऋभवो ये अश्वा।**
**ये अंसत्रा य ऋधग्रोदसी ये विभ्वो नरः स्वपत्यानि चक्रुः ॥९॥**

आफ्ना रक्षण साधनले अश्विनीकुमारलाई सक्षम बनाउने, आफ्ना मातापितालाई तरुण बनाउने, गाईलाई दुधालु बनाउने र अश्वलाई बलियो बनाउने ऋभुहरूले कवच निर्माण गरे। उनीहरूले नै द्यावापृथ्वी छुट्याए र तिनै बलशाली नायकले उत्तम कर्म सम्पन्न गरे, त्यसैले तिनीहरू नै सबैभन्दा पहिले सोमपान गरुन्।

ये गोमन्तं वाजवन्तं सुवीरं रयिं धत्थ वसुमन्तं पुरुक्षुम्।
ते अग्रेपा ऋभवो मन्दसाना अस्मे धत्त ये च रातिं गृणन्ति ॥१०॥

हे ऋभुहरू हो ! गाई, अश्व र असल पराक्रमी सन्तानले सम्पन्न द्रव्य तथा प्रचुर अन्न भएको ऐश्वर्य धारण गर्दछौ। तिम्रा ऐश्वर्यको प्रशंसा सर्वतिर
हुन्छ। सर्वभन्दा पहिले सोम पान गरेर हर्षित भएपछि हामीलाई ऐश्वर्य प्रदान गर।

नापाभूत न वोऽतीतृषामानिः शस्ता ऋभवो यज्ञे अस्मिन्।
समिन्द्रेण मदथ सं मरुद्भिः सं राजभी रत्नधेयाय देवाः ॥११॥

हे ऋभुहरू हो ! तिमीहरू हामीदेखि टाढा नजाओ। हामी पनि तिमीहरूलाई भोकोतिर्खो राख्दैनौं। हे ऋभु हो ! देवत्व सम्पन्न र आनन्दित भएर इन्द्रदेवसित यस यज्ञमा आएर रमाओ। हे देवताहरू हो ! रत्न दानका लागि प्रकट हुने गरेका मरुत्हरूसँग तिमीहरू खुसी होओ।

[सूक्त - ३५]

ऋषि - वामदेव गौतम। देवता - ऋभुगण। छन्द - त्रिष्टुप्।

इहोप यात शवसो नपातः सौधन्वना ऋभवो माप भूत।
अस्मिन्हि वः सवने रत्नधेयं गमन्त्विन्द्रमनु वो मदासः ॥१॥

सुधन्वाका बलशाली पुत्र हे ऋभुहरू हो ! हामीकहाँ आओ, हामीदेखि टाढा नजाओ। यज्ञमण्डपमा रत्न प्रदाता इन्द्रदेवलाई प्रदान गरिने आनन्ददायी सोमरस तिमीहरूलाई पनि प्राप्त होस्।

आगन्नृभूणामिह रत्नधेयमभूत्सोमस्य सुषुतस्य पीतिः।
सुकृत्यया यत्स्वपस्यया चँ एकं विचक्र चमसं चतुर्धा ॥२॥

हे ऋभुहरू हो ! तिमीहरूको रत्न आदि दान हाम्रा नजिक होऊन्। राम्ररी पेलेर तयार गरेको सोमरस पान गरिराख। तिमीहरूले आफ्नो सिप र कर्मका इच्छा
ले नै एउटा चसमलाई चार किसिमले निर्माण गरेका हौ।

व्यकृणोत चमसं चतुर्धा सखे वि शिक्षेत्यब्रवीत।
अथैत वाजा अमृतस्य पन्थां गणं देवानामृभवः सुहस्ताः ॥३॥

हे ऋभुहरू हो ! तिमीहरूले एउटै चमस चार किसिमको बनाउँदा हे मित्रदेव कृपा गर भनेका थियौ। अनि अग्निदेवले तिमीहरू अविनाशी मार्गको अनुसरण गर, तिमीहरूका हात कुशल भएकाले देवपथको अनुसरण गर्दै अमरता प्राप्त गर भनेका थिए।

किंमयः स्विच्चमस एष आस यं काव्येन चतुरो विचक्र।
अथा सुनुध्वं सवनं मदाय पात ऋभवो मधुनः सोम्यस्य ॥४॥

हे ऋभुहरू हो ! तिमीहरूका कौशलले चार किसिमको बनाएको चमस कुन वस्तुले बनेको थियो ? हे ऋत्विक्हरू हो ! खुसी हुनका लागि तिमीहरू सबै सोमरस पेलेर तयार गर। हे ऋभुहरू हो ! तिमीहरू सबैले मिठो सोमरस पान गर।

शच्याकर्त पितरा युवाना शच्याकर्त चमसं देवपानम्।
शच्या हरी धनुतरावतष्टेन्द्रवाहावृभवो वाजरत्नाः ॥५॥

हे ऋभु हो ! तिमीहरूका सिप र जाँगरले मातापितालाई युवा र चमसलाई देवताहरूले पान गर्न योग्य बनायौ। रमणीय ऐश्वर्य भएका हे ऋभुहरू हो ! तिमीहरूले आफ्ना कौशलद्वारा इन्द्रदेवलाई वहन गर्ने अश्व बाणभन्दा चाँडो गतिमा कुद्ने बनायौ।

यो वः सुनोत्यभिपित्वे अह्नां तीव्रं वाजासः सवनं मदाय।
तस्मै रयिमृभवः सर्ववीरमा तक्षत वृषणो मन्दसानाः ॥६॥

हे ऋभुह हो ! तिमीहरू सबै अन्नले सम्पन्न छौ। दिनको समाप्ति हुने बेलामा याजकहरू तिमीलाई आनन्द प्रदान गर्न सोमरस पेलेर तयार गर्दछन्। हे बलशाली ऋभु हो ! तिमीहरू हर्षित भएपछि याजकलाई अनेकौं किसिमले पराक्रमी, उत्तम सन्तानले सम्पन्न ऐश्वर्य प्रदान गर्दछौ।

प्रातः सुतमपिबो हर्यश्व माध्यन्दिनं सवनं केवलं ते।
समृभुभिः पिबस्व रत्नधेभिः सखीयाँ इन्द्र चकृषे सुकृत्या ॥७॥

हे अश्वले सुशोभित इन्द्रदेव ! बिहानीपख पेलेर तयार गरेको सोमरस पान गर। मध्याह्न कालको सोमरस पनि तिम्रै लागि हो। हे इन्द्रदेव ! उत्तम कार्य गर्दै जाँदा तिमीले जुन रत्नप्रदाता ऋभुहरूसित मित्रता स्थापित गरेका छौ, उनैसित सोमरस पान गर।

ये दवासो अभवता सुकृत्या श्येना इवेदधि दिवि निषेद।
ते रत्नं धात शवसो नपातः सौधन्वना अभवतामृतासः ॥८॥

हे ऋभु हो ! तिमीहरू सत्कर्म गर्नाका कारणले देवता बनेका हौ। अमरत्व प्रदान गर्ने हे सुधन्वाका पुत्र हो ! बाजपक्षीजस्तै भएर द्युलोकमा प्रतिष्ठित होओ र सधैं किसिमले धनऐश्वर्य प्रदान गर।

यत्तृतीयं सवनं रत्नधेयमकृणुध्वं स्वपस्या सुहस्ताः।
तदृभवः परिषिक्तं व एतत्सं मदेभिरिन्द्रियेभिः पिबध्वम् ॥९॥

हे असल हात भएका ऋभु हो ! तेस्रो सवनलाई आफ्नो सत्कर्मद्वारा ऐश्वर्य प्रदान गर्ने बनायौ। हे ऋभु हो ! खुसी तनमनले पेलेर तयार गरेको सोमरस ग्रहण गर।

[सूक्त - ३६]

ऋषि - वामदेव गौतम। देवता - ऋभुगण। छन्द - जगती त्रिष्टुप्।

अनश्वो जातो अनभीशुरुक्थ्यो३ रथस्त्रिचक्रः परि वर्तते रजः।
महत्तद्वो देव्यस्य प्रवाचनं द्यामृभवः पृथिवीं यच्च पुष्यथ ॥१॥

हे ऋभु हो ! तिमीहरूको कार्य प्रशंसनीय छ। तिमीहरूले अश्विनीकुमारलाई प्रदान गरेको तीन पाङ्ग्रे रथको अश्व लगामविना नै आकाशमा चारैतिर विचरण गर्दछ। त्यस रथबाट द्यावापृथिवीको पोषण गर्दछौ। त्यस महान् कार्यले तिमीहरू दिव्यता सम्पन्न भएका छौ।

रथं ये चक्रुः सुवृतं सुचेतसोऽविह्वरन्तं मनसस्परि ध्यया।
ताँ ऊ न्वस्य सवनस्य पीतय आ वो वाजा ऋभवो वेदयामसि ॥२॥

असल विचार भएका ऋभु हो ! तिमीहरूले मनका सङ्कल्पद्वारा राम्री घुम्ने र छलकपटविनाको रथ निर्माण गरेका थियौ। हे वाज र ऋभुहरू हो ! हामी सोमरस पान गर्नका लागि तिमीहरूलाई आमन्त्रित गर्दछौं।

तद्वो वाजा ऋभवः सुप्रवाचनं देवेषु विभ्वो अभवन्महित्वनम्।
जिव्री यत्सन्ता पितरा सनाजुरा पुनर्युवाना चरथाय तक्षथ ॥३॥

हे वाज, ऋभु र विभु हो ! तिमीहरूले आफ्ना अत्यधिक वृद्ध र जीर्ण मातापितालाई हिँडडुल गर्न सक्ने युवा बनायौ। तिमीहरूको त्यो महान् कार्य देवताका बीचमा अत्यन्त प्रशंसनीय भयो।

एकं वि चक्र चमसं चतुर्वयं निश्चर्मणो गामरिणीत धीतिभिः। अथा देवेष्वमृतत्वमानश श्रुष्टी वाजा ऋभवस्तद्व उक्थ्यम् ॥४॥

हे ऋभुहरू हो ! तिमीहरूले एउटा चमसलाई चार भागमा विभाजित गरेका थियौ र आफ्ना कार्यले हाडछाला मात्रै भएका गाईलाई बलियो बनाएका थियौ। त्यसै कारणले तिमीहरूले देवताहरूका बीचमा अमरता प्राप्त गर्‍यौ। हे वाज तथा ऋभु हो ! तिमीहरूका ती कार्य अति प्रशंसनीय छन्।

ऋभुतो रयिः प्रथमश्रवस्तमो वाजश्रुतासो यमजीजनन्नरः।
विभ्वतष्टो विदथेषु प्रवाच्यो यं देवासोऽवथा स विचर्षणिः ॥५॥

वाज र प्रसिद्ध नेताजस्ता ऋभुले उत्पन्न गरेको प्रचुर अन्नरूपी ऐश्वर्य उनीहरूबाट हामीलाई प्राप्त होस्। ऋभुले बनाएको रथ विशेष रूपले युद्धमा प्रशंसा गर्न योग्य छ। हे देवता हो ! तिमीहरू जसलाई संरक्षण प्रदान गर्दछौ, त्यो प्रख्यात हुन्छ।

स वाज्यर्वा स ऋषिर्वचस्यया स शूरो अस्ता पृतनासु दुष्टरः।
स रायस्पोषं स सुवीर्यं दधे यं वाजो विभ्वाँ ऋभवो यमाविषुः ॥६॥

वाज, विभु र ऋभुले संरक्षण प्रदान गरेको मानिस बलशाली भएर युद्धमा कुशल हुन्छ। मन्त्रद्रष्टा ऋषिझैं त्यो पराक्रमी हुन्छ र आयुध हुत्याउन सक्ने सङ्ग्राममा अपराजेय हुन्छ। त्यो मानिस ऐश्वर्य, पुष्टि र असल पराक्रम धारण गर्ने हुन्छ।

श्रेष्ठं वः पेशो अधि धायि दर्शतं स्तोमो वाजा ऋभवस्तं जुजुष्टन।
धीरासो हि ष्ठा कवयो विपश्चितस्तान्व एना ब्रह्मणा वेदयामसि ॥७॥

हे वाज र ऋभु हो ! तिमीहरू असल व्यवहार र राम्रो रूपका छौ। हामीले तिमीहरूका लागि स्तोत्र रचना गरेका छौं, ग्रहण गर। तिमीहरू धैर्यवान्, दूरदर्शी र मेधावी छौ। हामी आफ्ना स्तोत्रले तिमीहरूलाई बोलाउँछौं।

यूयमस्मभ्यं धिषणाभ्यस्परि विद्वांसो विश्वा नर्याणि भोजना।
द्युमन्तं वाजं वृषशुष्ममुत्तममा नो रयिमृभवस्तक्षता वयः ॥८॥

हे ऋभु हो ! तिमीहरू ज्ञानले सम्पन्न भएर हाम्रो आशाभन्दा पनि बढी, मानिसको हितकारी सम्पत्ति हामीलाई प्रदान गर। हाम्रा लागि दीप्तिमान् ऐश्वर्ययुक्त अधिकार, असल अन्नधन र बल प्रदान गर।

इह प्रजामिह रयिं रराणा इह श्रवो वीरवत्तक्षता नः।
येन वयं चितयेमात्यन्यान्तं वाजं चित्रमृभवो ददा नः ॥९॥

हे ऋभु हो ! तिमीहरू हाम्रा यस यज्ञमा खुसी भएर सन्तान, ऐश्वर्य र पराक्रम दिने अन्न प्रदान गर। हामीलाई अरूहरूभन्दा अगाडि बढाउन सक्ने असल अन्न प्रदान गर।

[सूक्त - ३७]

ऋषि - वामदेव गौतम। देवता - ऋभुगण। छन्द - त्रिष्टुप् अनुष्टुप्।

उप नो वाजा अध्वरमृभुक्षा देवा यात पथिभिर्देवयानैः।
यथा यज्ञं मनुषो विक्ष्वाऽऽ सु दधिध्वे रण्वाः सुदिनेष्वह्नाम् ॥१॥

हे सुन्दर ऋभु हो ! दिन श्रेष्ठता बनाउन याजकले यज्ञ धारण गरेझैँ देवताका मार्गबाट तिमीहरू हाम्रा यज्ञमा आओ।

ते वो हृदे मनसे सन्तु यज्ञा जुष्टासो अद्य घृतनिर्णिजो गुः।
प्र वः सुतासो हरयन्त पूर्णाः क्रत्वे दक्षय हर्षयन्त पीताः ॥२॥

आज तिम्रा मन र हृदयलाई यस यज्ञले हर्ष प्रदान गर्न सकोस्। घिउ मिसाएको मनग्गे सोमरस तिमीतिर आओस्। उत्साहले भरिएको र पेलेर तयार गरेका सोमरस तिमीहरूलाई खोज्दै छ। सोमरस पिएर सत्कर्म गर्ने स्फुर्ति प्राप्त गर।

त्र्युदायं देवहितं यथा वः स्तोमो वाजा ऋभुक्षणो ददे वः।
जुह्वे मनुष्वदुपरासु विक्षु युष्मे सचा बृहद्दिवेषु सोमम् ॥३॥

हे वाज र ऋभु हो ! तिमीहरूलाई स्तुति समर्पित गरेझैँ हामी तीनै सवनमा पेलेर तयार गरेको र देवतालाई हित गर्ने सोमरस अर्पित गर्दछौँ। असल मानिसका बीचमा तेजस्वी जीवन निर्वाह गर्नका लागि हामी सोमरस प्रदान गर्दछौँ।

पीवोअश्वाः शुचद्रथा हि भूतायः शिप्रा वाजिनः सुनिष्काः।
इन्द्रस्य सूनो शवसो नपातोऽनु वश्चेत्यग्रियं मदाय ॥४॥

हे ऋभु हो ! तिमीहरू बलिष्ठ अश्व, तेजयुक्त रथ, फलामे कवच भएका र अन्नवान् तथा असल धनले युक्त छौ। इन्द्रदेवका पुत्र र बलले उत्पन्न भएका हे ऋभु हो ! यो उत्तम सोमरस तिमीहरूलाई नै प्रदान गरिएको हो।

ऋभुमृभुक्षणो रयिं वाजे वाजिन्तमं युजम्।
इन्द्रस्वन्तं हवामहे सदासातममश्विनम् ॥५॥

हे ऋभु हो ! हामी अत्यधिक संवर्द्धनशील ऐश्वर्य आह्वान गर्दछौँ। युद्धमा अत्यधिक बलशाली संरक्षक हुनाले आह्वान गर्दछौँ र सधैँ उदार, इन्द्रदेवका प्रिय, असल अश्व भएका तिमीहरूका गणलाई आह्वान गर्दछौँ।

सेदृभवो यमवथ यूयमिन्द्रश्च मर्त्यम्।
स धीभिरस्तु सनिता मेधसाता सो अर्वता ॥६॥

हे ऋभु हो ! तिमी र इन्द्रदेव जुन व्यक्तिलाई संरक्षण प्रदान गर्दछौ, त्यो व्यक्ति महान् हुन्छ। त्यही व्यक्ति आफ्ना कर्मले धनको भागीदार र यज्ञमा अश्वले सम्पन्न हुन्छ।

वि नो वाजा ऋभुक्षणः पथश्चितन यष्टवे।
अस्मभ्यं सूरयः स्तुता विश्वा आशास्तरीषणि ॥७॥

हे वाज तथा ऋभु हो ! तिमीहरू हाम्रा लागि असल कर्म गर्ने मार्ग फराकिलो बनाओ। हे ज्ञानी हो ! तिमीहरू प्रशंसित भएर सम्पूर्ण दिशामा सफलतापूर्वक अघि बढ्नका लागि हामीलाई बाटो देखाओ।

तं नो वाजा ऋभुक्षण इन्द्र नासत्या रयिम्।
समश्वं चर्षणिभ्य आ पुरु शस्त मघत्तये ॥८॥

हे वाज हो ! हे ऋभु हो ! हे अश्विनीकुमार हो ! हे इन्द्रदेव ! तिमीहरू सबैले हामीजस्ता स्तोतालाई मनग्गे ऐश्वर्य र अश्वको शक्ति प्राप्त गर्नका लागि आशीर्वाद देओ।

[सूक्त - ३८]

ऋषि – वामदेव गौतम। देवता – दधिक्रा द्यावापृथिवी। छन्द – त्रिष्टुप्।

उतो हि वां दात्रा सन्ति पूर्वा या पूरुभ्यस्त्रसदस्युर्नितोशे।
क्षेत्रासां ददथुरुर्वरासां घनं दस्युभ्यो अभिभूतिमुग्रम् ॥१॥

हे द्यावापृथिवी ! दान गर्नमा प्रसिद्ध त्रसदस्युले याजकलाई प्रदान गरेको सम्पत्ति तिमीहरूकै वैभव हो। तिमीहरूले उनलाई जमिन जोत्नका लागि अश्व र जमिन उर्वर बनाउनका लागि पुत्र प्रदान गरेका थियौ। तिमीहरूले नै शत्रु जित्नका लागि धारिला हतियार प्रदान गरेका थियौ।

उत वाजिनं पुरुनिष्षिध्वानं दधिक्रामु ददथुर्विश्वकृष्टिम्।
ऋजिप्यं श्येनं प्रुषितप्सुमाशुं चर्कृत्यमर्यो नृपतिं न शूरम् ॥२॥

शक्तिशाली, अनेकौं शत्रुका संहारक, समस्त मानिसका हितकारक, श्येनपक्षीजस्तै सोझो बाटोका यात्री, ओजस्वी रूप भएका, महान् व्यक्तिबाट प्रशंसा पाउने, राजाजस्तै शूरवीर, द्रुत गतिले यात्रा गर्ने दधिक्रादेवलाई द्यावापृथिवीले धारण गर्दछन्।

यं सीमनु प्रवतेव द्रवन्तं विश्वः पूरुर्मदति हर्षमाणः।
पड्भिर्गृध्यन्तं मेधयुं न शूरं रथतुरं वातमिव ध्रजन्तम् ॥३॥

बलिया हुनाले समस्त मानिसहरू दधिक्रादेवको प्रार्थना गर्दछन्। ओरालोतिर बग्ने जलजस्तै गमनशील, युद्धको कामना गर्ने, शूरवीरजस्तै आफ्नै खुट्टाले संसारका सबै दिशामा पुग्न खोज्ने र वायुजस्तै चाँडो हिँड्ने उनै हुन्।

यः स्मारुन्धानो गध्या समत्सु सनुतरश्चरति गोषु गच्छन्।
आविर्ऋजीको विदथा निचिक्यत्तिरो अरतिं पर्याप आयोः ॥४॥

सङ्ग्राममा एकत्र भएका पदार्थलाई रोक्ने, महान् ऐश्वर्यले सम्पन्न, समस्त दिशाको भ्रमण गर्दै सबै ठाउँमा व्याप्त र आफ्नो हतियार देखाएर सङ्ग्राममा प्रसिद्ध हुने गरेका दधिक्रादेवले हाम्रा शत्रु हामीबाट टाढा गराऊन्।

उत स्मैनं वस्त्रमथिं न तायुमनु क्रोशन्ति क्षितयो भरेषु।
नीचायमानं जसुरिं न श्येनं श्रवश्चाच्छा पशुमच्च यूथम् ॥५॥

लुगा गहना चोर्ने चोर देख्दा चिच्याएझैं युद्धमा दधिक्रादेवलाई देखेर शत्रु चिच्याउन थाल्छन्। झम्टिन लागेको बाज देखेर चरो भागेझैं अन्न र पशुका बथानतिर सोझै जान लागेका दधिक्रादेवलाई देखेर समस्त शत्रु भाग्दछन्।

उत स्मासु प्रथमः सरिष्यन्नि वेवेति श्रेणिभी रथानाम्।
स्रजं कृण्वानो जन्यो न शुभ्वा रेणुं रेरिहत्किरणं ददश्वान् ॥६॥

दधिक्रादेव शत्रुसेनाको बीचमा जाने विचारले रथका लहरसँग सम्पन्न छन्। महत्त्वाकाङ्क्षील मालाले शरीर सजाएझैं माला पहिरिएर सुन्दर देखिएका दधिक्रादेव दाँतले लगाम तान्दै धुलाले धूलो र फुर्के भएका हुन्छन्।

उत स्य वाजी सहुरिर्ऋतावा शुश्रूषमाणस्तन्वा समर्ये।
तुरं यतीषु तुरयन्नृजिप्योऽधि भ्रुवोः किरते रेणुमृञ्जन् ॥७॥

बलशाली, सङ्ग्राममा शत्रु संहार गर्ने, अनुशासन पालन गर्ने, आफ्नै शरीर चाटेर सुसार गर्ने, द्रुतगतिले गमन गरेका सेनामाथि आक्रमण गर्ने र छोटो बाटो हिँड्ने दधिक्रादेव खुट्टाले धुलो उडाउँदै आफ्ना आँखाभौं माथि नचाउँछन्।

उत स्मास्य तन्यतोरिव द्योर्ऋघायतो अभियुजो भयन्ते।
यदा सहस्रमभि षीमयोधीद्दुर्वर्तुः स्मा भवति भीम ऋञ्जन् ॥८॥

तेजस्वी, ध्वनि उत्पन्न गर्ने, वज्रझैं शत्रुसेनामाथि आक्रमण गर्ने दधिक्रादेवसित युद्धको रहर गर्ने मानिस पनि डराउने सक्छन्। उनी चारैतिर हजारौं शत्रुसित युद्ध गर्दाखेरि उत्तेजित भएर भयङ्कर देखिन्छन् र अजेय पनि छन्।

उत स्मास्य पनयन्ति जना जूतिं कृष्टिप्रो अभिभूतिमाशोः।
उतैनमाहुः समिथे वियन्तः परा दधिक्रा असरत्सहस्रैः ॥९॥

मानिसको रहरलाई पूरा गराउने र तीव्र वेग भएका दधिक्रादेवको शौर्य एवं गतिलाई मानिसले प्रार्थना गर्दछन् लडाईंमा जाने योद्धा यिनका विषयमा दधिक्रादेवले हजारौं शत्रु पराजित गरेर अगाडि बढ्दछन् भन्ने कुरो गर्दछन्।

आ दधिक्राः शवसा पञ्च कृष्टीः सूर्यइव ज्योतिषापस्ततान।
सहस्रसाः शतसा वाज्यर्वा पृणक्तु मध्वा समिमा वचांसि ॥१०॥

आदित्यगणका तेजले आकाश व्याप्त गरेझैं दधिक्रादेवले आफ्ना तेजले पाँचै वर्णका मानिसलाई व्याप्त गरेका छन्। सयौं वा हजारौं किसिमका ऐश्वर्य प्रदान गर्ने बलशाली दधिक्रादेवले हाम्रो स्तुति मधुरताले संयुक्त गराऊन्।

[सूक्त - ३९]

ऋषि – वामदेव गौतम। देवता – दधिक्रा। छन्द – त्रिष्टुप् अनुष्टुप्।

आशुं दधिक्रां तमु नु ष्टवाम दिवस्पृथिव्या उत चर्किराम।
उच्छन्तीर्मामुषसः सूदयन्त्वति विश्वानि दुरितानि पर्षन् ॥१॥

दधिक्रादेवलाईं हामी प्रार्थना गर्दछौं र द्यावापृथिवीलाई प्रार्थना गर्दछौं। तम निवारण गर्ने उषाले हामीलाई उत्साहित गरून् र समस्त आपद्बाट पार लगाऊन्।

महश्चर्कर्म्यर्वतः क्रतुप्रा दधिक्राव्णः पुरुवारस्य वृष्णः।
यं पूरुभ्यो दीदिवांसं नाग्निं ददथुर्मित्रावरुणा ततुरिम् ॥२॥

हामी यज्ञ सम्पन्न गराउँछौं। अनेकौंले वरण गर्न योग्य, महान् र खोजेको कुरो वर्षा गर्ने दधिक्रादेवलाई हामी प्रार्थना गर्दछौं। हे मित्रावरुण ! तिमीहरू दुवै तेजस्वी अग्निझैं स्थित र आपद्बाट जोगाउने दधिक्रादेवलाई याजकको हितका लागि धारण गर्दछौ।

यो अश्वस्य दधिक्राव्णो अकारीत्समिद्धे अग्ना उषसो व्युष्टौ।
अनागसं तमदितिः कृणोतु स मित्रेण वरुणेना सजोषाः ॥३॥

उषा प्रकट भएर अग्नि प्रदीप्त भएपछि अश्वको रूपमा रहेका दधिक्रादेवको प्रार्थना गर्ने मानिसलाई मित्र, वरुण र अदितिसँगै दधिक्रादेवले पापबाट मुक्त गराउँछन्।

दधिक्राव्ण इष ऊर्जो महो यदमन्महि मरुतां नाम भद्रम्।
स्वस्तये वरुणं मित्रमग्निं हवामह इन्द्रं वज्रबाहुम् ॥४॥

अन्नप्रदाता, बलप्रदाता, असल र याजकको हित गर्ने दधिक्रादेव र मरुत्का नाममा हामी प्रार्थना गर्दछौं। मित्र, वरुण, अग्नि र हातमा वज्र लिने इन्द्रदेवलाई बोलाउँछौं।

इन्द्रमिवेदुभये वि ह्वयन्त उदीराणा यज्ञमुपप्रयन्तः।
दधिक्रामु सूदनं मर्त्याय ददथुर्मित्रावरुणा नो अश्वम् ॥५॥

युद्ध गर्नका लागि पराक्रम गर्ने र यज्ञ गर्नका लागि प्रयत्न गर्ने ती दुवै मानिसले दधिक्रादेवलाई इन्द्रदेवजत्तिकै बोलाउँछन्। हे मित्रावरुण ! तिमीहरूले मानिसलाई प्रेरित गर्ने द्रुतगामी अश्वजस्ता दधिक्रादेवलाई हाम्रा निम्ति धारण गऱ्यौ।

दधिक्राव्णो अकारिषं जिष्णोरश्वस्य वाजिनः।
सुरभि नोमुखा करत्प्र ण आयूंषि तारिषत् ॥६॥

हामी विजयले सम्पन्न, व्यापक र वेगवान् दधिक्रादेवको प्रार्थना गर्दछौं। उनले हाम्रो मुख आदि इन्द्रिय सुन्दर तथा सबल गराऊन् र हाम्रो आयु वृद्धि गरून्।

[सूक्त - ४०]

ऋषि – वामदेव गौतम। देवता – दधिक्रा सूर्य। छन्द – जगती त्रिष्टुप्।

दधिक्राव्ण इदु नु चर्किराम विश्वा इन्मामुषसः सूदयन्तु।
अपामग्नेरुषसः सूर्यस्य बृहस्पतेराङ्गिरसस्य जिष्णोः ॥१॥

हामी दधिक्रादेवलाई बारम्बार प्रार्थना गर्दछौं। समस्त उषाले हामीलाई प्रेरणा प्रदान गरून्। हामी जल, अग्नि, सूर्य, उषा, बृहस्पति र आङ्गिरस जिष्णुको प्रार्थना गर्दछौं।

सत्वा भरिषो गविषो दुवन्यसच्छ्रवस्यादिष उषसस्तुरण्यसत्।
सत्यो द्रवो द्रवरः पतंङ्गरो दधिक्रावेषमूर्जं स्वर्जनत् ॥२॥

शक्तिशाली, भरणपोषण गर्ने, गाईलाई प्रेरित गर्ने, भक्तका बीचमा निवास गर्ने र द्रुतगतिले गमन गर्ने दधिक्रादेवले उषा कालमा अन्नको कामना गरून्। सत्यको मार्गमा चल्ने, वेगसम्पन्न, अर्कालाई पनि वेग प्रदान गर्ने र उफ्रँदै हिँड्ने दधिक्रादेवले हाम्रा लागि अन्न, बल र हर्ष उत्पन्न गरून्।

उत स्मास्य द्रवतस्तुरण्यतः पर्णं न वेरनु वाति प्रगर्धिनः।
श्येनस्येव ध्रजतो अङ्कसं परि दधिक्राव्णः सहोर्जा तरित्रतः ॥३॥

पँखेटाले चराको अनुसरण गरेझैँ वेगपूर्वक कुद्ने र प्रतिस्पर्धा गर्ने दधिक्रादेवको अनुसरण मानिसले गर्दछन्। बाज पक्षीको उडानजस्तो गरी हिँड्ने र सुरक्षा प्रदान गर्ने दधिक्रादेवका शरीरलाई सबैले एकै ठाउँमा भेला भएर अन्न आदि प्राप्त गर्न घेर्दछन्।

उत स्य वाजी क्षिपणिं तुरण्यति ग्रीवायां बद्धो अपिकक्ष आसनि।
क्रतुं दधिक्रा अनु संतवीत्वत्पथामङ्कांस्यन्वापनीफणत् ॥४॥

दधिक्रादेव बलशाली अश्वझैँ गला र मुखमा बाँधिएका भए पनि शत्रुलाई तीव्र गतिले झम्टन्छन्। अत्यधिक शक्तिशाली भएर यज्ञको अनुगमन गर्दै कुटिल मार्ग पार गर्छन्।

हंसः शुचिषद्वसुरन्तरिक्षसद्धोता वेदिषदतिथिर्दुरोणसत्।
नृषद्वरसदृतसद्व्योमसदब्जा गोजा ऋतजा अद्रिजा ऋतम् ॥५॥

तेजोमय आकाशमा हंस एवं अन्तरिक्षमा वसु रहेका हुन्छन्। होताहरू वेदीमा अतिथिझैँ पूज्य भएर घरमा बस्दछन्। ऋतको वास मानिस, रोजिएको ठाउँ, यज्ञस्थल एवं अन्तरिक्षमा हुन्छ। उनी जलमा, रश्मिमा, सत्यमा र पर्वतमा उत्पन्न भएका हुन्।

[सूक्त – ४१]

ऋषि – वामदेव गौतम। देवता – इन्द्रावरुण। छन्द – त्रिष्टुप्।

इन्द्रा को वां वरुणा सुम्नमाप स्तोमो हविष्मॉअमृतो न होता।
यो वां हृदि क्रतुमाँ अस्मदुक्तः पस्पर्शदिन्द्रावरुणा नमस्वान् ॥१॥

हे इन्द्र र वरुणदेवहरू हो ! हामीले विवेकपूर्वक र विनम्रतापूर्वक उच्चारण गरेका तिम्रो हृदय स्पर्श गर्ने स्तोत्र कुन हुन् ? हे इन्द्र र वरुणदेवहरू हो ! अविनाशी र आहुतिले सम्पन्न अग्निजस्तै प्रदीप्त त्यो स्तोत्र तिम्रा अन्तःस्तलमा प्रवेश गरोस्।

इन्द्रा ह यो वरुणा चक्र आपी देवौ मर्तः सख्याय प्रयस्वान्।
स हन्ति वृत्रा समिथेषु शत्रूनवोभिर्वा महद्भिः स प्र शृण्वे ॥२॥

आहुतिले सम्पन्न भएर इन्द्र र वरुण दुवै देवताको मित्रता प्राप्त गर्नका लागि आफ्ना बन्धु बनाउने व्यक्तिले आफ्नो पाप विनाश गराउँछन्। युद्धमा शत्रुको विनाश गराउँछन् र महान् सुरक्षा प्राप्त गरेका कारणले प्रसिद्ध पनि हुन्छन्।

इन्द्रा ह रत्नं वरुणा धेष्ठेत्था नृभ्यः शशमानेभ्यस्ता।
यदी सखाया सख्याय सोमैः सुतेभिः सुप्रयसा मादयैते ॥३॥

हे विख्यात इन्द्र र वरुणदेव हो ! तिमीहरू दुवै देवता हामीजस्ता स्तोताका निम्ति ऐश्वर्य प्रदान गर्दछौ। तिमीहरू दुवै परस्परमा मित्र हौ र मित्रताका लागि पेलेर तयार गरेको सोमरस र उत्तम अन्नले खुसी हुन्छौ भनेदेखि हामीलाई ऐश्वर्य प्रदान गर।

इन्द्रा युवं वरुणा दिद्युमस्मिन्नोजिष्ठमुग्रा नि वधिष्टं वज्रम्।
यो नो दुरेवो वृकतिर्दभीतिस्तस्मिन्मिमाथामभिभूत्योजः ॥४॥

हे पराक्रमी इन्द्र र वरुणदेव हो ! हाम्रो कुभलो गर्ने, दान नदिने र हिंसक स्वभावका छन्, तिमीहरू दुवै आफ्नो विनाशकारी तेज तिनीहरूमा प्रकट गर। तिमीहरू दुवै त्यस शत्रुमाथि आफ्नो तेजस्वीभन्दा अत्यधिक ओजस्वी वज्रको प्रहार गर।

इन्द्रा युवं वरुणा भूतमस्या धियः प्रेतारा वृषभेव धेनोः।
सा नो दुहीयद्यवसेव गत्वी सहस्रधारा पयसा मही गौः ॥५॥

हे इन्द्र तथा वरुणदेव हो ! साँढेले गाईसित प्रीति गाँसेझैँ तिमीहरू दुई हाम्रा प्रार्थनाका प्रेमी हौ। असल गाईले घाँस खाएर हजारौं धारा दुध दुहन तयार भएझैँ त्यस प्रार्थनाले हाम्रो अभिलाषा पूर्ण गरोस्।

तोके हिते तनय उर्वरासु सूरो दृशीके वृषणश्च पौंस्ये।
इन्द्रा नो अत्र वरुणा स्यातामवोभिर्दस्मा परितक्म्यायाम् ॥६॥

हे इन्द्र र वरुणदेव हो ! तिमीहरू आफ्ना रक्षणसाधनले सम्पन्न भएर शत्रुको विनाश गर्नका लागि राति पनि तयार हुन्छौ। त्यसबाट हामी छोरानाति र उब्जाउ भूमिले लाभान्वित हुन सकौं। धेरै दिनसम्म सूर्यदेवको दर्शन गर्न सकौं र सन्तान उत्पन्न गर्ने सामर्थ्य प्राप्त गर्न सकौं।

युवामिद्ध्यवसे पूर्व्याय परि प्रभूती गविषः स्वापी।
वृणीमहे सख्याय प्रियाय शूरा मंहिष्ठा पितरेव शम्भू ॥७॥

हे इन्द्र र वरुणदेव हो ! गाईको कामना गर्ने हामी तिमीहरू दुईका पुरातन संरक्षणको अभिलाषा गर्दछौं। तिमीहरू दुवै बलशाली, पराक्रमी र अत्यन्त वन्दनीय हुनाले हामी तिमीहरूका नजिक हर्षप्रदायक, पिताजस्तै मित्रता र प्रेमको प्रार्थना गर्दछौं।

ता वां धियोऽवसे वाजयन्तीराजिं न जग्मुर्युवयूः सुदानू।
श्रिये न गाव उप सोममस्थुरिन्द्रं गिरो वरुणं मे मनीषाः ॥८॥

हे असल फलप्रदाता इन्द्र र वरुणदेव ! तिमीहरूका उपासक युद्धमा सुरक्षाका लागि तिमीहरूतिर आएझैं रक्षा र धनको अभिलाषा गर्ने हाम्रो प्रार्थना तिमीहरूतिर जान्छ। तेजको अभिवृद्धिका लागि गाई सोमरसका नजिक गएझैं विवेकपूर्वक हामीले गरेको प्रार्थना तिमीहरू दुईका नजिकै पुग्दछ।

इमा इन्द्रं वरुणं मे मनीषा अग्मन्नुप द्रविणमिच्छमानाः।
उपेमस्थुर्जोष्टार इव वस्वो रघ्वीरिव श्रवसो भिक्षमाणाः ॥९॥

धन कमाउन खोज्ने मानिस धनीका नजिक गएझैं हाम्रो प्रार्थना ऐश्वर्य लाभको कामनाले इन्द्र र वरुणदेवका नजिकै जान्छ। खाने कुरो माग्ने भिखारी दानीका नजिकै गएझैं हाम्रो प्रार्थना इन्द्र र वरुणदेवका नजिकै जान्छन्।

अश्व्यस्य त्मना रथ्यस्य पुष्टेर्नित्यस्य रायः पतयः स्याम।
ता चक्राणा ऊतिभिर्नव्यसीभिरस्मत्रा रायो नियुतः सचन्ताम् ॥१०॥

हामी आफ्ना बलले अश्व, रथ, पोषक पदार्थ र अविनाशी ऐश्वर्यको अधिपति होऔं। गमनशील दुवै देवताका नयाँ रक्षणसाधनले हामीलाई अश्व र धनले युक्त गराऊन्।

आ नो बृहन्ता बृहतीभिरूती इन्द्र यातं वरुण वाजसातौ।
यद्दिद्यवः पृतनासु प्रक्रीडान्तस्य वां स्याम सनितार आजेः ॥११॥

हे महान् इन्द्र र वरुणदेव हो ! लडाइँमा हाम्रो सुरक्षाका लागि आफ्ना रक्षणसाधनले सम्पन्न भएर हाम्रा नजिकै आओ। शत्रुसेनाका हतियार नाच्ने सङ्ग्राममा तिमीहरू दुवैको कृपाले हामीले विजय पाउन सकौं।

[सूक्त - ४२]

ऋषि - त्रसदस्यु पौरुकुत्स। देवता - त्रसदस्यु इन्द्रावरुण। छन्द - त्रिष्टुप्।

मम द्विता राष्ट्रं क्षत्रियस्य विश्वायोर्विश्वे अमृता यथा नः।
क्रतुं सचन्ते वरुणस्य देवा राजामि कृष्टेरुपमस्य वव्रेः ॥१॥

हामी क्षत्रिय जातिमा उत्पन्न भएका छौं। समस्त मानिसका हामी राजा हौं। हाम्रो राष्ट्र दुई किसिमको छ। सबै देवता हाम्रा भएझैं मानिसहरू हाम्रै हुन्। हामी सौन्दर्यवान् र नजिकमा रहेका वरुण हौं। सबै देवता हाम्रा यज्ञको सेवा गर्दछन्। हामी मानिसका शासक पनि हौं।

अहं राजा वरुणो मह्यं तान्यसुर्याणि प्रथमा धारयन्त।
क्रतुं सचन्ते वरुणस्य देवा राजामि कृष्टेरुपमस्य वव्रेः ॥२॥

हामी अधिपति वरुण हौं। सबै देवता हाम्रै महान् सामर्थ्य धारण गर्दछन्। हामी सौन्दर्यवान र समीपस्थ वरुण हौं। सबै देवता हाम्रै यज्ञको सेवा गर्दछन् र हामी मानिसका शासक पनि हौं।

अहमिन्द्रो वरुणस्ते महित्वोर्वी गभीरे रजसी सुमेके।
त्वष्टेव विश्वा भुवनानि विद्वान्त्समैरयं रोदसी धारयं च ॥३॥

हामी इन्द्र र वरुण हौं। आफ्नो महानताका कारण विस्तृत, गम्भीर र श्रेष्ठ रूप भएका द्यावापृथिवी पनि हामी नै हौं। हामी मेधावी हौं। हामी त्वष्टा देवताले झैं सबै भुवन प्रेरित गर्दछौं र द्यावा पृथिवी धारण गर्दछौं।

अहमपो अपिन्वमुक्षमाणा धारयं दिवं सदन ऋतस्य।
ऋतेन पुत्रो अदितेर्ऋतावोत त्रिधातु प्रथयद्वि भूम॥४॥

हामीले नै सिंचाइ गर्ने जल वर्षा गरायौं र जलको स्थानका रूपमा रहेका स्वर्गलोकमा आदित्य स्थापना गरायौं। हामी अदितिका पुत्र जलका लागि ऋतवान् छौं। हामीले नै तीन भुवनले युक्त सृष्टिलाई विस्तृत गराएका हौं।

मां नरः स्वश्वा वाजयन्तो मां वृताः समरणे हवन्ते।
कृणोम्याजिं मघवाहमिन्द्र इयर्मि रेणुमभिभूत्येजाः॥५॥

हामी असल अश्व हुने योद्धालाई युद्ध गर्न बोलाउँछौं। हामी धनले सम्पन्न इन्द्रका रूपमा रहेर युद्ध गर्दछौं। हामी पराजित गराउने बलले सम्पन्न भएर धुलो उडाउँछौं।

अहं ता विश्वा चकरं नकिर्मा दैव्यं सहो वरते अप्रतीतम्।
यन्मा सोमासो ममदन्यदुक्थोभे भयेते रजसी अपारे॥६॥

हामीले नै सबै लोक सिर्जना गरेका हौं। हामी कहीं पनि नरोकिने खालका दैवी बलले सम्पन्न छौं। कसैले पनि हामीलाई रोक्न सक्दैन। सोमरस र स्तोत्रले हामीलाई खुसी पार्दा सीमाविहीन द्यावापृथिवी पनि डरले थर्कमान हुन्छन्।

विदुष्टे विश्वा भुवनानि तस्य ता प्र ब्रवीषि वरुणाय वेधः।
त्वं वृत्राणि शृण्विषे जघन्वान्त्वं वृताँ अरिणा इन्द्र सिन्धून्॥७॥

हे वरुणदेव ! तिम्रो कर्म सारा संसारले जानेको छ। हे स्तुति गर्ने हो ! वरुणदेवको प्रार्थना गर। हे इन्द्रदेव ! तिमीले शत्रु संहार गरेकाले तिमी विख्यात छौ। तिमीले थुनिएका नदी प्रवाहित गरेका हौ।

अस्माकमत्र पितरस्त आसन्त्सप्त ऋषयो दौर्गहे बध्यमाने।
त आयजन्त त्रसदस्युमस्या इन्द्रं न वृत्रतुरमर्धदेवम्॥८॥

दुर्गहका पुत्र पुरुकुत्सलाई बाँधेपछि राष्ट्रको पालन सप्तर्षिले गरे। उनीहरूले इन्द्र र वरुणका कृपाले पुरुकुत्सकी स्त्रीका लागि यज्ञ गरेर त्रसदस्युलाई प्राप्त गरे। त्रसदस्युले इन्द्रदेवझैं शत्रु संहार गर्ने र देवताको आधा स्वरूप इन्द्रबाट पाए।

पुरुकुत्सानी हि वामदाशद्धव्येभिरिन्द्रावरुणा नमोभिः।
अथा राजानं त्रसदस्युमस्या वृत्रहणं ददथुरर्धदेवम्॥९॥

हे इन्द्रावरुण हो ! ऋषिहरूबाट प्रेरणा दिइएपछि पुरुकुत्सकी स्त्रीले तिमीलाई आहुति र प्रार्थनाले खुसी गराइन्। त्यसपछि तिमीहरू दुवैले उनलाई शत्रुसंहारक अर्धदेव राजा त्रसदस्युलाई प्रदान गरेका थिए।

राया वयं ससवांसो मदेम हव्येन देवा यवसेन गावः।
तां धेनुमिन्द्रावरुणा युवं नो विश्वाहा धत्तमनपस्फुरन्तीम्॥१०॥

सत्यको विस्तार गर्ने हे मित्र र वरुणदेव हो ! तिमीहरू दुवैको सन्तुष्टिका लागि यो सोमरस प्रस्तुत छ। यज्ञशालामा आओ, हामी सबैलाई निमन्त्रणा गर्दछौं। हे सोम ! उपयाम पात्रमा इन्द्र र वरुणदेवका लागि नै तिमी नियमअनुसार तयार गरिएका छौ, हामी उनीहरूकै निम्ति समर्पित गर्दछौं।

[सूक्त - ४३]

ऋषि - सौहोत्र। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

क उ श्रवत्कतमो यज्ञियानां वन्दारु देवः कतमो जुषाते।
कस्येमां देवीममृतेषु प्रेष्ठां हृदि श्रेषाम सुष्टुतिं सुहव्याम्॥१॥

यजनीय देवताहरूमध्ये कुन देवताले हाम्रो स्तुति सुन्लान् ? कुन देवता वन्दना गर्न योग्य स्तोत्र सेवन गर्दछन् ? देवताहरूमध्ये कुन देवतालाई हामी अत्यन्त प्रिय छौं र कुन प्रकाशमान हविले युक्त प्रार्थना गरौं।

को मृळाति कतम आगमिष्ठो देवानामु कतमः शम्भविष्ठः।
रथं कमाहुर्द्रवदश्वमाशुं यं सूर्यस्य दुहितावृणीत॥२॥

कुन देवताले हामी मानिसलाई खुसी बनाउँछन् र हाम्रो यज्ञमण्डपमा आउनका लागि सबैभन्दा बढी

हतार देखाउँछन् ? देवताहरूमध्ये कुन देवताको रथ द्रुतगामी भईकन वेगवान् अश्वले सम्पन्न छ ? सूर्यकी पुत्रीले कसलाई नमस्कार गरेकी थिइन् ?

**मक्षू हि ष्मा गच्छथ ईवतो द्यूनिन्द्रो न शक्तिं परितक्म्यायाम् ।**
**दिव आजाता दिव्या सुपर्णा कया शचीनां भवथः शचिष्ठा ॥३॥**

हे दिव्य र श्रेष्ठ पँखेटा भएका अश्विनीकुमार हो ! तिमीहरू दुवै द्युलोकबाट आउँछौ। अनेकौं बलमध्ये कुन बलका कारण तिमीहरू अत्यधिक बलशाली बनेका छौ ? राती तिमीहरू इन्द्रदेवको जस्तै बल प्रकट गर्दछौ। यज्ञका समयमा गरिने कार्यमा तिमीहरू अति चाँडो जाने गर्दछौ।

**का वां भूदुपमातिः कया न आश्विना गमथो हूयमाना ।**
**को वां महश्चित्त्यजसो अभीक उरुष्यतं माध्वी दस्रा न ऊती ॥४॥**

हे मधुर स्वभाव भएका र शत्रु विनाश गर्ने अश्विनीकुमार हो ! कस्ता खालको प्रार्थना तिमीहरूका लागि अनुकूल होला ? कस्ता स्तुतिले बोलाउँदा हाम्रा नजिक आउँछौ ? तिमीहरूको ठूलो क्रोध कसले खप्ला ? आआफ्ना रक्षणसाधनले हाम्रो सुरक्षा गर।

**उरु वां रथः परि नक्षति द्यामा यत्समुद्रादभि वर्तते वाम् ।**
**मध्वा माध्वी मधु वां प्रुषायन्यत्सीं वां पृक्षो भुरजन्त पक्वाः ॥५॥**

हे अश्विनीकुमार हो ! तिमीहरू दुईको विशाल रथ द्युलोकमा चारैतिर गमन गर्दछ। समुद्रबाट पनि तिमीहरूतिर आउँछ। तिमीहरू दुवैका निम्ति परिपक्व जौसँगै सोमरस संयुक्त छ। हे मधुर जल उत्पन्न गर्ने र शत्रु विनाश गर्ने अश्विनीकुमार हो ! याजकहरू तिमीहरूका लागि सोमरस दुधमा मिसाइरहेका छन्।

**सिन्धुर्ह वां रसया सिञ्चदश्वान्घृणा वयोऽरुषासः परि ग्मन् ।**
**तदू षु वामजिरं चेति यानं येन पती भवथः सूर्यायाः ॥६॥**

विशाल नदीले तिमीहरूका अश्वलाई जलले सेचन गरेका छन्। चरोभैं फट्ट उड्ने प्रकाशवान् राता वर्णका घोडा चारैतिर घुम्दछन्। तिमीहरूको द्रुतगामी रथ सबैतिर प्रसिद्ध छ। त्यसैबाट तिमीहरू दुई सूर्यको नियम पालन गर्ने भएका छौ।

**इहेह यद्वां समना पपृक्षे सेयमस्मे सुमतिर्वाजरत्ना ।**
**उरुष्यतं जरितारं युवं ह श्रितः कामो नासत्या युवद्रिक् ॥७॥**

हे शक्तिरूपी अन्न धारण गर्ने अश्विनीकुमार हो ! एकै किसिमको विचार हुने तिमीहरू दुवैलाई हामी स्तुति समर्पित गर्दछौं। त्यो राम्रो स्तुति हामी याजकका लागि फलदायक होस्। हे अश्विनीकुमार हो ! हाम्रो सुरक्षा गर। हाम्रो रहर तिमीहरू दुवै भएतिर छ।

**[सूक्त - ४४]**

**ऋषि – सौहोत्र। देवता – अश्विनीकुमार। छन्द – त्रिष्टुप्।**

**तं वां रथं वयमद्या हुवेम पृथुज्रयमश्विना सङ्गतिं गोः ।**
**यः सूर्यां वहति वन्धुरायुर्गिर्वाहसं पुरुतमं वसूयुम् ॥१॥**

हे अश्विनीकुमार हो ! आज हामी तिमीहरूको प्रसिद्ध वेग भएको र गाई प्रदान गर्ने रथ निम्त्याउँछौं। काठका खम्बा भएका रथले सूर्यालाई धारण गर्दछ। त्यो स्तुति बोक्ने रथ विशाल र ऐश्वर्यवान् छ।

**युवं श्रियमश्विना देवता तां दिवो नपाता वनथः शचीभिः ।**
**युवोर्वपुरभि पृक्षः सचन्ते वहन्ति यत्ककुहासो रथे वाम् ॥२॥**

हे द्युलोक थाम्ने अश्विनीकुमार देवता हो ! तिमीहरू दुवैले त्यो श्रेष्ठता आआफ्नै बलले प्राप्त गरेका हौ। विशाल अश्व नारिएका रथले तिमीहरूलाई बोक्दा तिमीहरू दुवैको शरीर सोमरसले पुष्ट गर्दछ।

**को वामद्या करते रातहव्य ऊतये वा सुतपेयाय वार्कैः ।**
**ऋतस्य वा वनुषे पूर्व्याय नमो येमानो अश्विना ववर्तत् ॥३॥**

कुन सोमरस प्रदाताले आज आफ्नो सुरक्षाका लागि अथवा पैलेर तयार गरेको सोमरस पिउनका लागि तिम्रो प्रार्थना गर्दछ ? नमस्कार गर्ने कुन मानिस तिमीहरू दुवैलाई यज्ञका लागि प्रवृत्त गराउँछ ?

हिरण्ययेन पुरुभू रथेनेमं यज्ञं नासत्योप यातम्।
पिबाथ इन्मधुनः सोम्यस्य दधथो रत्नं विधते जनाय ॥४॥

हे अनकौं प्रकारले आफ्नो सत्ता प्रकट गर्ने र सत्यको पालन गर्ने अश्विनीकुमार हो ! तिमीहरू दुवै यस यज्ञमा सुनौलो रथबाट आओ, मिठो सोमरस पान गर र पुरुषार्थीलाई मनोहर ऐश्वर्य प्रदान गर।

आ नो यातं दिवो अच्छा पृथिव्या हिरण्ययेन सुवृता रथेन।
मा वामन्ये नि यमन्देवयन्तः सं यद्दे नाभिः पूर्व्या वाम् ॥५॥

हे अश्विनीकुमारहरू हो ! सुनौलो उत्तम रथमा द्युलोक वा भूलोकबाट हामीतिर आओ। तिमीहरूलाई चाहने अन्य याजकले तिमीहरूलाई बीचै बाटामा रोक्न नसकून्, किनभने पुरानो जमानादेखि नै हामीले स्तुति प्रस्तुत गरेका छौं।

नू नो रयिं पुरुवीरं बृहन्तं दस्रा मिमाथामुभयेष्वस्मे।
नरो यद्वामश्विना स्तोममावन्त्सधस्तुतिमाजामीढहासो अग्मन् ॥६॥

हे शत्रु संहार गर्ने अश्विनीकुमार हो ! पुरुमीढहका स्तोताले तिमीहरूलाई स्तुति गरेरै प्राप्त गरेका हुन् र अजमीढहका स्तोताको प्रशंसा पनि उसैमा सामेल छ।

इहेह यद्वां समना पपृक्षे सेयमस्मे सुमतिर्वाजरत्ना।
उरुष्यतं जरितारं युवं ह श्रितः कामो नासत्या युवद्रिक् ॥७॥

हे शक्तिरूपी अन्न धारण गर्ने अश्विनीकुमार हो ! एकै विचार भएका तिमीहरू दुवैलाई हामी स्तुति समर्पित गर्दछौं। त्यो राम्रो स्तुति हामी याजकका लागि फलदायक होस्। हे अश्विनीकुमार हो ! तिमीहरू दुईले हाम्रो सुरक्षा गर। हाम्रो रहर तिमीहरूतिरै छ।

[सूक्त - ४५]

ऋषि - वामदेव गौतम। देवता - अश्विनीकुमार। छन्द - जगती त्रिष्टुप्।

एष स्य भानुरुदियर्ति युज्यते रथः परिज्मा दिवो अस्य सानवि।
पृक्षासो अस्मिन्मिथुना अधि त्रयो दृतिस्तुरीयो मधुनो वि रप्शते ॥१॥

प्रकाशका धनी सूर्यदेव उदाएका छन्। हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैको रथ चारैतिर घुम्दै छ। त्यो रथ प्रकाशपुञ्जजस्तै सूर्यदेवसितै उच्च स्थानमा भेट हुन्छ। यस रथमा जोडा बनाएर तीन किसिमका अन्न राखिएका छन् र सोमरसलाई चौथो पात्रमा विशेष रूपले राखिएको देखिँदै छ।

उद्वां पृक्षासो मधुमन्त ईरते रथा अश्वास उषसो व्युष्टिषु।
अपोर्णुवन्ततम आ परीवृतं स्वर्ण शुक्रं तन्वन्त आ रजः ॥२॥

उषाहरू उदित हुनाले मधुर अन्न र अश्वले सम्पन्न तिमीहरूको रथ चारैतिर बाक्लिएर बसेको अन्धकार नाश गराउँदै सूर्यदेवजस्तै प्रदीप्त तेज चारैतिर फिँजाउँदै माथितिर मुख फर्काएर घुमिरहेका छन्।

मध्वः पिबतं मधुपेभिरासभिरुत प्रियं मधुने युञ्जाथां रथम्।
आ वर्तनिं मधुना जिन्वथस्पथो दृतिं वहेथे मधुमन्तमश्विना ॥३॥

हे अश्विनीकुमार हो ! तिमीहरू मधुर रस पान गर्ने मुखले सोमरस पान गर र मधुर रस प्राप्त गर्नका लागि आफ्ना प्रिय रथमा अश्व जोतेर याजकका घरमा आओ। तिमीहरू दुवै जाने गरेको मार्ग मधुर रसले परिपूर्ण गर र सोमरसले पूर्ण पात्र धारण गर।

हंसासो ये वां मधुमन्तो अस्रिधो हिरण्यपर्णा उहुव उषर्बुधः।
उदप्रुतो मन्दिनो मन्दिनिस्पृशो मध्वो न मक्षः सवनानि गच्छथः ॥४॥

द्रुतगामी, मधुरतायुक्त, विद्रोहविनाका, सुनौला पँखेटा भएका, उषा कालमा जाग्ने, टाढासम्म जान सक्ने, पसिनाका थोपा खसाउने र खुसी गराउने अश्वले तिमीहरूलाई बोकेका छन्। माहुरी महतिर भ्याम्मिएझैं तिमीहरू हाम्रा यज्ञका सवनमा आओ।

स्वध्वरासो मधुमन्तो अग्नय उस्रा जरन्ते प्रति वस्तोरश्विना।
यन्निक्तहस्तस्तरणिर्विचक्षणः सोमं सुषाव मधुमन्तमद्रिभिः ॥५॥

कार्य पूरा गराउने मेधावी याजकले मन्त्रले जल भरेर हात पखाल्दै ढुङ्गाले कुटेर मिठो सोमरस पेल्दै तयार गर्दा प्रत्येक उषा कालमा मधुरतायुक्त, असल अहिंसित कर्म गर्ने, अग्निजस्तै तेजस्वी अश्विनीकुमारको याजकले प्रार्थना गर्दछन्।

आकेनिपासो अहभिर्दविध्वतः स्व१र्ण शुक्रं तन्वन्त आ रजः ।
सूरश्चिदश्वान्युयुजान ईयते विश्वाँ अनु स्वधया चेतथस्पथः ॥६॥

नजिकै अवतरण हुने किरण दिउँसोका उज्यालोले अन्धकार नष्ट गराउँदै सूर्यदेवको जस्तै प्रदीप्त तेज फिँजाउँछन् । अश्व नारेर सूर्यदेव गमन गर्दछन् । हे अश्विनीकुमार हो । तिमीहरू आफ्ना धारक शक्तिले सबै मार्ग क्रमैसित देखाउँछौ ।

प्र वामवोचमश्विना धियन्धा रथः स्वश्वो अजरो यो अस्ति ।
येन सद्यः परि रजांसि याथो हविष्मन्तं तरणिं भोजमच्छ ॥७॥

हे अश्विनीकुमार हो ! हामी स्तोताले तिमीहरू दुवैको प्रार्थना गर्दछौं । तिमीहरू दुवै असल अश्व भएका, कहिल्यै नथोत्रिने रथबाट पलभरिमै तीनै लोकको परिक्रमा गर्छौ । त्यसैले तिमीहरू हवियुक्त, शीघ्र गमन गर्ने र भोजन प्रदान गर्ने यज्ञमा आओ ।

[सूक्त - ४६]

ऋषि - वामदेव गौतम । देवता - इन्द्रवायु । छन्द - गायत्री ।

अग्रं पिबा मधूनां सुतं वायो दिविष्टिषु । त्वं हि पूर्वपा असि ॥१॥

हे वायुदेवता ! यज्ञमा आसीन हुँदा पेलेर तयारी मिठो सोमरस सर्वप्रथम पान गर । किनभने तिमी नै सबैभन्दा पहिले सोमरस पान गर्दछौ ।

शतेना नो अभिष्टिभिर्नियुत्वाँ इन्द्रसारथिः । वायो सुतस्य तृम्पतम् ॥२॥

हे असल अश्व भएका वायुदेवता ! इन्द्रदेव तिम्रा सारथी हुन् । तिमी कामना पूरा गराउन सयौं अश्वमा हामीकहाँ आऊ । तिमी र इन्द्रदेव पेलेर तयार गरेको सोमरस पान गर ।

आ वां सहस्रं हरय इन्द्रवायू अभि प्रयः । वहन्तु सोमपीतये ॥३॥

हे इन्द्र र वायुदेव ! हजारौं सङ्ख्यामा द्रुत गतिका घोडामा सोमपान गर्न यहाँ आओ ।

रथं हिरण्यवन्धुरमिन्द्रवायू स्वध्वरम् । आ हि स्थाथो दिविस्पृशम् ॥४॥

हे इन्द्र र वायुदेव ! सुन जडिएका, यज्ञ राम्ररी सफल गराउने र अन्तरिक्ष स्पर्श गर्ने रथमा आएर बस ।

रथेन पृथुपाजसा दाश्वांसमुप गच्छतम् । इन्द्रवायू इहा गतम् ॥५॥

हे इन्द्र र वायुदेव ! अत्यधिक सामर्थ्यशाली रथमा हविप्रदाता यजमानका नजिकै यस यज्ञमण्डपमा आओ ।

इन्द्रवायू अयं सुतस्तं देवेभिः सजोषसा । पिबतं दाशुषो गृहे ॥६॥

हे इन्द्र र वायुदेव ! यो सोमरस तिमीहरूका लागि पेलेर तयार गरेको हो । देवतासित उस्तै स्नेह गर्ने तिमीहरू दुवै हविप्रदाता यजमानका यज्ञमण्डपमा त्यो पान गर ।

इह प्रयाणमस्तु वामिन्द्रवायू विमोचनम् । इह वां सोमपीतये ॥७॥

हे इन्द्र र वायुदेव ! तिमीहरू यस यज्ञमा आओ । यहाँ आएर सोमपान गर्नका लागि आआफ्ना अश्वलाई मुक्त गराओ ।

[सूक्त - ४७]

ऋषि - वामदेव गौतम । देवता - इन्द्रवायु । छन्द - अनुष्टुप् ।

वायो शुक्रो अयामि ते मध्वो अग्रं दिविष्टिषु ।
आ याहि सोमपीतये स्पार्हो देव नियुत्वता ॥१॥

हे वायु ! हामी निर्दोष छौं र तिम्रा लागि यज्ञमा सर्वप्रथम सोमरस अर्पित गर्दछौं । हे देवता ! आदर गर्न योग्य तिमी नियुत नामका अश्वमा बसेर सोमपान गर्न आऊ ।

इन्द्रश्च वायवेषां सोमानां पीतिमर्हथः ।
युवां हि यन्तीन्दवो निम्नमापो न सध्र्यक् ॥२॥

हे वायु र इन्द्रदेव ! तिमीहरू दुवै सोमपान गर्ने योग्यता उपयुक्त भएका छौ । ओरालो लागेको पानीको धाराभैं बगेको सोमरसको प्रवाहसम्म तिमीहरू दुवै पुग्दछौ ।

वायविन्द्रश्च शुष्मिणा सरथं शवसस्पती।
नियुत्वन्ता न ऊतय आ यातं सोमपीतये ॥३॥

हे वायु र इन्द्रदेव ! तिमीहरू दुवै बलका स्वामी र सामर्थ्यवान् हौ। नियुत नामका घोडा हुने तिमीहरू दुवै हाम्रो रक्षा गर्न र सोमरस पान गर्न सँगै आओ।

या वां सन्ति पुरुस्पृहो नियुतो दाशुषे नरा।
अस्मे ता यज्ञवाहसेन्द्रवायू नि यच्छतम् ॥४॥

हे नेता र यज्ञका सम्पादक इन्द्र र वरुणदेव ! तिमीहरू दुवैसित भएका अनेकौंले मन पराउने अश्वजति सबै म दानदाता यजमानलाई प्रदान गर।

[सूक्त - ४८]

ऋषि - वामदेव गौतम। देवता - वायु। छन्द - अनुष्टुप्।

विहि होत्रा अवीता विपो न रा यो अर्यः।
वायवा चन्द्रेण रथेन याहि सुतस्य पीतये ॥१॥

हे वायुदेव ! शत्रु थर्काउने योद्धाजस्तो अरूले पिउन नसक्ने सोमरस पान गर र स्तोताको ऐश्वर्य वृद्धि गर। हे वायुदेव ! सोमपान गर्न शीतलता प्रदान गर्ने रथमा आऊ।

निर्युवाणो अशस्तीर्नियुत्वाँ इन्द्रसारथिः।
वायवा चन्द्रेण रथेन याहि सुतस्य पीतये ॥२॥

हे वायुदेव ! अवर्णनीय, तरुण अश्वलाई तिमी रथमा लगाउँछौ। इन्द्रदेवता तिम्रा सारथी हुन्। हे वायुदेव ! सोमपान गर्नका लागि शीतलता प्रदान गर्ने रथबाट आऊ।

अनु कृष्णे वसुधिती येमाते विश्वपेशसा।
वायवा चन्द्रेण रथेन याहि सुतस्य पीतये ॥३॥

हे वायुदेव ! कालो रङ्गका, ऐश्वर्यधारक, धेरै रूप भएका, द्यावापृथिवीले तिम्रै अनुसरण गर्दछन्। तिमी सोमपान गर्नका लागि शीतलता प्रदान गर्ने रथबाट आऊ।

वहन्तु त्वा मनोयुजो युक्तासो नवतिर्नव।
वायवा चन्द्रेण रथेन याहि सुतस्य पीतये ॥४॥

हे वायुदेव ! मनजस्तै वेगशाली, परस्पर आवद्ध हुने उनान्सय घोडाले तिमीलाई लिएर जान्छन्। हे वायुदेव ! सोमपान गर्नका लागि शीतलता प्रदान गर्ने रथबाट आऊ।

वायो शतं हरीणां युवस्व पोष्याणाम्।
उत वा ते सहस्रिणो रथ आ यातु पाजसा ॥५॥

हे वायुदेव ! आफ्ना सयौं सङ्ख्यामा रहेका पोषणयोग्य अश्वलाई रथमा नियुक्त गर। तिम्रो हजारौं अश्व भएको रथ वेगपूर्वक आओस्।

[सूक्त - ४९]

ऋषि - वामदेव गौतम। देवता - इन्द्राबृहस्पति। छन्द - गायत्री।

इदं वामास्ये हविः प्रियमिन्द्राबृहस्पती। उक्थं मदश्च शस्यते ॥१॥

हे इन्द्र र बृहस्पतिदेव ! यो स्नेहयुक्त आहुति तिमीहरूका मुखमा समर्पित गर्दछौं। तिमीहरू दुवैलाई हामी स्तोत्र र हर्षप्रदायक सोमरस प्रदान गर्दछौं।

अयं वां परि षिच्यते सोम इन्द्राबृहस्पती। चारुर्मदाय पीतये ॥२॥

हे इन्द्रद र बृहस्पतिदेव ! तिमीहरूको खुसीका लागि र सोमरस पान गर्नका लागि यो मनोहर सोमरस पेलेर तयार गरिन्छ।

आ न इन्द्राबृहस्पती गृहमिन्द्रश्च गच्छतम्। सोमपा सोमपीतये ॥३॥

हे सोमपान गर्ने इन्द्रदेव ! सोमपान गर्न तिमी र बृहस्पतिदेव दुवै हाम्रा घरमा आओ।

अस्मे इन्द्राबृहस्पती रयिं धत्तं शतग्विनम्। अश्वावन्तं सहस्रिणम् ॥४॥

हे इन्द्र र बृहस्पतिदेव ! हामीलाई सयौं गाई र हजारौं अश्वले सम्पन्न ऐश्वर्य प्रदान गर।

इन्द्राबृहस्पती वयं सुते गीर्भिर्हवामहे। अस्य सोमस्य पीतये ॥५॥

हे इन्द्र र बृहस्पतिदेव ! सोमरस पेलिएपछि पान गर्न हामी प्रार्थना गर्दै बोलाउँछौं।

सोममिन्द्राबृहस्पती पिबतं दाशुषो गृहे। मादयेथां तदोकसा ॥६॥
हे इन्द्र र बृहस्पतिदेव ! हवि प्रदाता यजमानका घरमा सोमपान गरेर बसेर खुसी होओ।

[सूक्त - ५०]

ऋषि – वामदेव गौतम। देवता – इन्द्राबृहस्पति। छन्द – त्रिष्टुप् जगती।

यस्तस्तम्भ सहसा वि ज्मो अन्तान्बृहस्पतिस्त्रिषधस्थो रवेण।
तं प्रत्नास ऋषयो दीध्यानाः पुरो विप्रा दधिरे मन्द्रजिह्वम् ॥१॥

तीनै लोकमा निवास गर्ने बृहस्पतिदेवल धर्तीका दसै दिशा रोकिदिए। मिठो बोल्ने बृहस्पतिदेवलाई पुराना ऋषि र तेजस्वी विद्वान्ले अघिल्तिर स्थापित गरे।

धुनेतयः सुप्रकेतं मदन्तो बृहस्पते अभि ये नस्ततस्रे।
पृषन्तं सृप्रमदब्धमूर्वं बृहस्पते रक्षतादस्य योनिम् ॥२॥

हे बृहस्पतिदेव ! शत्रु थर्काउने गति भएका, खुसी पार्ने र प्रार्थना गर्नेलाई फल प्रदान गर्दै उन्नति गराउँछौ र हिंसा गर्दैनौ। तिनका विशाल यज्ञको सुरक्षा गर्दछौ।

बृहस्पते या परमा परावदत आ त ऋतस्पृशो नि षेदुः।
तुभ्यं खाता अवता अद्रिदुग्धा मध्वः श्चोतन्त्यभितो विरप्शम् ॥३॥

हे बृहस्पतिदेव ! टाढाका प्रदेशका असल ठाउँबाट तिम्रा अश्व आउँछन्। जलकुण्डबाट जलधारा बगेझैं तिम्रा चारैतिर प्रार्थना गर्दै ढुङ्गाले पेलेका सोमले मधुर रस सेचन गर्छ।

बृहस्पतिः प्रथमं जायमानो महो ज्योतिषः परमे व्योमन्।
सप्तास्यस्तुविजातो रवेण वि सप्तरश्मिरधमत्तमांसि ॥४॥

सात किसिमका छन्दरूपी मुख भएका, धेरै किसिमले उत्पन्न हुने र सातै खालका रश्मि भएका बृहस्पतिदेव, महान् सूर्यदेवका परम आकाशमा सर्वप्रथम उत्पन्न भएर आफ्ना ज्योतिले अन्धकार नष्ट गराउँछन्।

स सुष्टुभा स ऋक्वता गणेन वलं रुरोज फलिगं रवेण।
बृहस्पतिरुस्रिया हव्यसूदः कनिक्रदद्वावशतीरुदाजत् ॥५॥

बृहस्पतिदेवले तेजस्वी तथा प्रार्थना गर्ने अङ्गिरासँगै ध्वनिले मेघ र वल नामका राक्षस वध गरे। उनले हवि प्रेरित गर्ने र कराउने गाईलाई कराउँदै बाहिर निकाले।

एवा पित्रे विश्वदेवाय वृष्णे यज्ञैर्विधेम नमसा हविर्भिः।
बृहस्पते सुप्रजा वीरवन्तो वयं स्याम पतयो रयीणाम् ॥६॥

सबैको पालन गर्ने, समस्त देवताका स्वामी र बलशाली बृहस्पतिदेवलाई हामी यज्ञ, आहुति र प्रार्थनाले सेवा गर्दछौं। हे बृहस्पतिदेव ! तिनका प्रभावले हामी असल सन्तान तथा पराक्रमले सम्पन्न ऐश्वर्यका धनी हुन सकौं।

स इद्राजा प्रतिजन्यानि विश्वा शुष्मेण तस्थावभि वीर्येण।
बृहस्पतिं यः सुभृतं बिभर्ति वल्गूयति वन्दते पूर्वभाजम् ॥७॥

सबैभन्दा पहिले असल पोषक वस्तुद्वारा बृहस्पतिदेवको सत्कार गर्ने, प्रार्थना गर्ने र नमस्कार गर्ने शासकले शत्रुको सबै बल आफ्ना सामर्थ्यले जित्दछन्।

स इत्क्षेति सुधित ओकसि स्वे तस्मा इळा पिन्वते विश्वदानीम्।
तस्मै विशः स्वयमेवा नमन्ते यस्मिन्ब्रह्मा राजनि पूर्व एति ॥८॥

जुन शासकका शासनमा ब्रह्मज्ञानी पुरोहित सबैबाट वन्दनीय भएर अघि लागेका हुन्छन्, उसले राम्रो सन्तुष्टिसाथ आफ्ना घरमा निवास गर्न पाउँछ। उसका लागि धर्तीले जुनसुकै बेला फल दिन्छ। त्यसलाई प्रजाले सम्मानपूर्वक नमस्कार गर्दछन्।

अप्रतीतो जयति सं धनानि प्रतिजन्यान्युत या सजन्या।
अवस्यवे यो वरिवः कृणोति ब्रह्मणे राजा तमवन्ति देवाः ॥९॥

सुरक्षाको खोजीमा लागेका ब्रह्मज्ञानीलाई ऐश्वर्य आदि दिएर त्यसको सुरक्षा गर्ने राजालाई देवताले संरक्षण दिन्छन्। निरन्तर रूपमा शत्रुको धन एवं ऐश्वर्य प्रजाका लागि जितेर तिनी महान् हुन्छन्।

इन्द्रश्च सोमं पिबतं बृहस्पतेऽस्मिन्यज्ञे मन्दसाना वृषण्वसू।
आ वां विशन्त्विन्दवः स्वाभुवोऽस्मे रयिं सर्ववीरं नि यच्छतम् ॥१०॥

हे बृहस्पतिदेव ! तिमी र इन्द्रदेव यस यज्ञमा खुसी भएर याजकलाई ऐश्वर्य प्रदान गर। सबै ठाउँमा विद्यमान रहने सोमरस तिमीहरू दुवैभित्र प्रवेश होस्। हामीलाई पराक्रमी सन्तानसहित मनग्गे धन प्रदान गर।

बृहस्पत इन्द्र वर्धतं नः सचा सा वां सुमतिर्भूत्वस्मे।
अविष्टं धियो जिगृतं पुरन्धीर्जजस्तमर्यो वनुषामरातीः ॥११॥

हे बृहस्पति र इन्द्रदेव ! तिमीहरू दुईले हामीलाई संवर्द्धित गर, हाम्रो यज्ञलाई संरक्षण गर र हाम्रो बुद्धि जगाइदेऔ। प्रार्थना गर्ने हामी याजकका शत्रु नाश गर।

[सूक्त - ५१]

**ऋषि** – वामदेव गौतम। **देवता** – उषा। **छन्द** – त्रिष्टुप्।

इदमु त्यत्पुरुतमं पुरस्ताज्ज्योतिस्तमसो वयुनावदस्थात्।
नूनं दिवो दुहितरो विभातीर्गातुं कृणवन्नुषसो जनाय ॥१॥

अत्यधिक विशाल र कर्ममा मानिसलाई संलग्न गराउने कान्तिमान् तेज पूर्व दिशामा अन्धकारबाट माथि निस्कँदै छ। निश्चित रूपले सूर्यकी पुत्री र दीप्तिमती उषाहरू याजकलाई हिँड्नेका लागि मार्ग देखाइदिँदै छन्।

अस्थुरु चित्रा उषसः पुरस्तान्मिता इव स्वरवोऽध्वरेषु।
व्यू व्रजस्य तमसो द्वारोच्छन्तीरव्रञ्छुचयः पावकाः ॥२॥

यज्ञमण्डपमा मौलो ठडिएझैँ, सुन्दर उषाहरू पूर्व दिशामा व्याप्त हुँदै छन्। उषाले गाईगोठको अन्धकारमय ढोका उघार्दछन् र आफ्ना सफाशुद्ध प्रकाशले संसार ढाक्छन्।

उच्छन्तीरद्य चितयन्त भोजान्राधोदेयायोषसो मघोनीः।
अचित्रे अन्तः पणयः ससन्त्वबुध्यमानास्तमसो विमध्ये ॥३॥

अन्धकार हटाएर ऐश्वर्यशाली उषाहरू भोजनदातालाई ऐश्वर्य प्रदान गर्नका लागि जाग्रत गराउँछन्। जागरुक नहुने लोभी व्यापारी अन्धकारमै सुतिरहून्।

कुवित्स देवीः सनयो नवो वा यामो बभूयादुषसो वो अद्य।
येना नवग्वे अङ्गिरे दशग्वे सप्तास्ये रेवती रेवदूष ॥४॥

हे उषादेवी हो ! तिमीहरूको पुरानो अथवा नयाँ रथ यज्ञमा अनेकौं पटक आइरहोस्। त्यसै रथबाट नवग्व, दशग्व र सात मुख भएका अङ्गिराका निम्ति ऐश्वर्यसम्पन्न भएर तिमीहरू प्रकट हुन्छौ।

यूयं हि देवीर्ऋतयुग्भिरश्वैः परिप्रयाथ भुवनानि सद्यः।
प्रबोधयन्तीरुषसः ससन्तं द्विपाच्चतुष्पाच्चरथाय जीवम् ॥५॥

हे उषादेवी हो ! तिमीहरू यज्ञमा जाने घोडाबाट समस्त लोक विचरण गर र निद्रामा परेका दुईखुट्टे र चारखुट्टेलाई परिक्रमा गर्नका लागि जागृत गराओ।

क्व स्विदासां कतमा पुराणी यया विधाना विदधुर्ऋभूणाम्।
शुभं यच्छुभ्रा उषसश्चरन्ति न वि ज्ञायन्ते सदृशीरजुर्याः ॥६॥

उषाका लागि ऋभुहरूले चमस आदि बनाएका थिए। ती पुराना उषाहरू को हुन् र कहाँ छन् ? प्रदीप्त उषाहरूले सौन्दर्य प्रदर्शित गर्दा सधैंका नयाँ हुनाले एउटै रूपमा हुन्छन्। यीमध्ये कुन नयाँ र कुन पुराना भन्ने ठम्याउन सकिँदैन।

ता घा ता भद्रा उषसः पुरासुरभिष्टिद्युम्ना ऋतजातसत्याः।
यास्वीजानः शशमान उक्थैः स्तुवञ्छंसन्द्रविणं सद्य आप ॥७॥

याज्ञिकले जुन उषालाई स्तोत्रले स्तुति गरेर तत्काल ऐश्वर्य प्राप्त गर्दछन्। तिनै हितकारी उषा प्राचीन कालदेखि नै आइपुग्नासाथ ऐश्वर्य प्रदान गर्दछन्। यिनीहरू यज्ञका लागि प्रकट भएका र सत्य परिणाम प्रदान गर्दछन्।

ता आ चरन्ति समना पुरस्तात्समानतः समना पप्रथानाः।
ऋतस्य देवी सदसो बुधाना गवां न सर्गा उषसो जरन्ते ॥८॥

उषाहरू समान रूपले पूर्व दिशामा चारैतिर फैलिँदै छन्। एकै किसिमका उषा समान आकाशमा फैँजिन्छन् र यज्ञस्थानको सूचना गर्छन्। उषादेवीहरू गाईका बथानजस्तै प्रशंसित हुन्छन्।

ता इत्न्वेश्व समना समानीरमीतवर्णा उषसश्चरन्ति।
गूहन्तीरभ्वमसितं रुशद्भिः शुक्रास्तनूभिः शुचयो रुचानाः ॥९॥

उषाहरू एकै किसिमको रूपरङ्ग भएका र असीमित रङ्गसम्पन्न भएर विचरण गर्दछन्। तिनीहरू विस्तृत रूपमा फैलिएको अन्धकार हटाइदिन्छन र आफ्ना कान्तिमय शरीरले पवित्र प्रकाशलाई अरू धेरै देदीप्यमान गराउँछन्।

रयिं दिवो दुहितरो विभातीः प्रजावन्तं यच्छतास्मासु देवीः।
स्योनादा वः प्रतिबुध्यमानाः सुवीर्यस्य पतयः स्याम ॥१०॥

हे द्युलोकका चेली, द्युतिमय उषादेवी हो ! हामीलाई सन्तानले युक्त ऐश्वर्य प्रदान गर। हे देवी हो ! मानिसले खुसी पाउनका लागि तिमीहरूसित निवेदन गर्दछन्। यसबाट हामी असल सन्तानले युक्त ऐश्वर्यका स्वामी हुन सकौं।

तद्वो दिवो दुहितरो विभातीरुप ब्रुव उषसो यज्ञकेतुः।
वयं स्याम यशसो जनेषु तद्द्यौश्च धत्तां पृथिवी च देवी ॥११॥

हे प्रकाशमान सूर्यकी पुत्री उषा हो ! हामी याजकहरू यज्ञ अर्पण गर्दछौं। तिमीहरूलाई हामी स्तुति गर्दछौं। त्यसबाट मानिसका बीचमा हामी यश र अन्नका अधिपति हुन सकौं। हाम्रो यस्तो कामना द्यावापृथिवीले सफल गरून्।

[सूक्त - ५२]

ऋषि - वामदेव गौतम। देवता - उषा। छन्द - गायत्री।

प्रति ष्या सूनरी जनी व्युच्छन्ती परि स्वसुः। दिवो अदर्शि दुहिता ॥१॥

प्राणीका प्रेरक, फल प्रदायक, आफ्ना दिदीबहिनीजस्ता रात्रिका अन्तिममा प्रकाश फिँजाउने, सूर्यपुत्री उषालाई सबैले देख्छन्।

अश्वेव चित्रारुषी माता गवामृतावरी। सखाभूदश्विनोरुषाः ॥२॥

चञ्चल बिजुलीजस्तो अद्‌भुत दीप्तिमान् किरणकी माता, यज्ञ आरम्भ गर्ने उषाका मित्र अश्विनीकुमार हुन्।

उत सखास्यश्विनोरुत माता गवामसि। उतोषो वस्व ईशिषे ॥३॥

तिमी अश्विनीकुमारका मित्र हुनाले देदीप्यमान रश्मि रचना गर्ने हे उषादेवी ! तिमी स्तुति गर्न योग्य छ्यौ।

यावयद्द्वेषसं त्वा चिकित्वित्सूनृतावरि। प्रति स्तोमैरभुत्स्महि ॥४॥

हे मिठो बोल्ने उषादेवी ! तिमी शत्रुलाई छुट्याउन सक्ने हौ। तिमी ज्ञानसम्पन्न हौ। हामी स्तुतिले तिमीलाई जागृत गराउँछौं।

प्रति भद्रा अदृक्षत गवां सर्गा न रश्मयः। ओषा अप्रा उरु ज्रयः ॥५॥

हितकारी रश्मि गाईको बथानझैं देखिँदै छ। उषादेवी विशेष तेज सबैतिर भर्दै छिन्।

आपप्रुषी विभावरि व्यावर्ज्योतिषा तमः। उषो अनु स्वधामव ॥६॥

हे दीप्तिमती उषादेवी ! तिमी संसारलाई तेजले पूर्ण गराउने हौ, अन्धकारलाई प्रकाशले पर भगाउने हौ। त्यसपछि तिमी आफ्नो धारण शक्तिलाई संरक्षित गर्ने हौ।

आ द्यां तनोषि रश्मिभिरान्तरिक्षमुरु प्रियम्। उषः शुक्रेण शोचिषा ॥७॥

हे उषादेवी ! तिमी आफ्ना रश्मिबाट द्युलोकलाई पूर्ण गराउँछ्यौ र पवित्र प्रकाशले प्रीतियुक्त विशाल आकाश पनि पूर्ण गराइदिन्छौ।

[सूक्त - ५३]

ऋषि - वामदेव गौतम। देवता - सविता। छन्द - जगती।

तद्देवस्य सवितुर्वार्यं महद्वृणीमहे असुरस्य प्रचेतसः।
छर्दिर्येन दाशुषे यच्छति त्मना तन्नो महाँ उदयान्देवो अक्तुभिः ॥१॥

हामी प्राणशक्तिका प्रदाता र मेधावी सवितादेवका वरण गर्न योग्य तथा श्रेष्ठ तेजको कामना गर्दछौं। त्यस तेजले हविप्रदाता यजमानलाई खुसी प्रदान गर्दछ। हामीलाई महान् सवितादेव त्यस्तो तेज प्रदान गर्दै रातको अन्तिम समयमा उदाउँछन्।

दिवो धर्त्ता भुवनस्य प्रजापतिः पिशङ्गं द्रापिं प्रति मुञ्चते कविः।
विचक्षणः प्रथयन्नापृणन्नुर्वजीजनत्सविता सुम्नमुक्थ्यम् ॥२॥

द्युलोक धारण गर्ने समस्त भुवनका प्रजा पालन गर्ने र विद्वान् सवितादेव आफ्नो सुनौंलो कवच खोल्दछन्। सबैंलाई हेरिरहेका सवितादेव आफ्नो तेज प्रकट गर्दै समस्त जगत् परिपूर्ण गराउँछन् र प्रार्थनाका लागि योग्य प्रचुर सुख उत्पन्न गर्दछन्।

आप्रा रजांसि दिव्यानि पार्थिवा श्लोकं देवः कृणुते स्वाय धर्मणे।
प्र बाहू अस्राक्सविता सवीमनि निवेशयन्प्रसुवन्नक्तुभिर्जगत् ॥३॥

सवितादेव आफ्ना तेजले द्युलोक र भूलोकलाई पूर्ण गराउँछन् र आफ्ना कर्मको प्रशंसा गर्दछन्। उनी संसारलाई आफ्ना कर्ममा नित्य स्थापित गर्दछन् र प्रेरित गर्दछन्। उनी सिर्जन शक्तिका लागि आफ्ना भुजा फिँजाउँछन्।

अदाभ्यो भुवनानि प्रचाकशद् व्रतानि देवः सविताभि रक्षते।
प्रास्राग्बाहू भुवनस्य प्रजाभ्यो धृतव्रतो महो अज्मस्य राजति ॥४॥

सवितादेव हिंसारहित भएर सबै लोक आलोकित गर्दछन् र नियमको सुरक्षा गर्दछन्। सबै लोकमा मानिसका लागि बाहु फिँजाउँछन्। नियमअनुसार गति लिएका सवितादेव संसारका श्रेष्ठ ईश्वर हुन्।

त्रिरन्तरिक्षं सविता महित्वना त्री रजांसि परिभूस्त्रीणि रोचना।
तिस्रो दिवः पृथिवीस्तिस्र इन्वति त्रिभिर्व्रतैरभि नो रक्षति त्मना ॥५॥

सवितादेव आफ्ना तेजले तीन अन्तरिक्ष पूर्ण गराउँछन् र आफ्ना महिमाले तीनै लोक परिपूर्ण गराउँछन्। सर्वश्रेष्ठ सवितादेव अग्नि, वायु र सूर्यलाई व्याप्त गराउँछन्। तिनले तीन वटा द्युलोक र तीन वटा पृथ्वी व्याप्त गरेका छन्। उनी आफ्ना तीन व्रतले हाम्रो सुरक्षा गरून्।

बृहत्सुम्नः प्रसवीता निवेशनो जगतः स्थातुरुभयस्य यो वशी।
स नो देवः सविता शर्म यच्छत्वस्मे क्षयाय त्रिवरूथमंहसः ॥६॥

आफूसित मनग्गे ऐश्वर्य राखेका, सबैलाई उत्पन्न र स्थिर गर्ने, स्थावर र जङ्गमलाई अधीनमा राख्ने सवितादेवले हाम्रो पाप नाश गरेर तीनै लोकको सुख प्रदान गरून्।

आगन्देव ऋतुभिर्वर्धतु क्षयं दधातु नः सविता सुप्रजामिषम्।
स नः क्षपाभिरहभिश्च जिन्वतु प्रजावन्तं रयिमस्मे समिन्वतु ॥७॥

उदाउँदै गरेका सवितादेवले सबै ऋतुमा हाम्रो सुख वृद्धि गरून् र हामीलाई असल सन्तानले सम्पन्न अन्न प्रदान गरून्। उनले हामीलाई रातदिन समृद्धिले सन्तुष्ट गरून् र प्रजाले सम्पन्न धन प्रदान गरून्।

[सूक्त - ५४]

ऋषि - वामदेव गौतम। देवता - सविता। छन्द - जगती त्रिष्टुप्।

अभूद्देवः सविता वन्द्यो नु न इदानीमह्न उपवाच्यो नृभिः।
वि यो रत्ना भजति मानवेभ्यः श्रेष्ठं नो अत्र द्रविणं यथा दधत् ॥१॥

सवितादेव उदाउँदै छन्, हामी उनको वन्दना गर्दछौँ। मानिसलाई ऐश्वर्य प्रदान गर्ने र हाम्रा यस यज्ञमा असल धन प्रदान गर्ने सवितादेव दिउँसोका यस भागमा याजकबाट प्रशंसनीय हुन्छन्।

देवेभ्यो हि प्रथमं यज्ञियेभ्योऽमृतत्वं सुवसि भागमुत्तमम्।
आदिद्दामानं सवितर्व्यूर्णुषेऽनूचीना जीविता मानुषेभ्यः ॥२॥

हे सवितादेव ! उदयकालमा तिमी यज्ञका लागि योग्य देवताको अमृतमय सार तत्त्वको उत्तम भाग प्रदान गर्दछौ। त्यसपछि उदाएर दीप्तिमान् रश्मि विस्तृत गराउँछौ र प्राणीको जीवनका लागि रश्मि विस्तार गर्दछौ।

अचित्ती यच्चकृमा दैव्ये जने दीनैर्दक्षैः प्रभूती पूरुषत्वता।
देवेषु च सवितर्मानुषेषु च त्वं नो अत्र सुवतादनागसः ॥३॥

हे सवितादेव ! हामीले भुल गरेर वा दुर्बलताका कारण, धनको अभिमानले वा मानिस भएका घमन्डले तिमीप्रति अथवा देवताहरूप्रति वा मानिसप्रति केही पाप गरेका भए यस यज्ञमा त्यस पापबाट हामीलाई मुक्त गर।

न प्रमिये सवितुर्दैव्यस्य तद्यथा विश्वं भुवनं धारयिष्यति।
यत्पृथिव्या वरिमन्ना स्वङ्गुरिर्वर्ष्मन्दिवः सुवति सत्यमस्य तत् ॥४॥
समस्त संसारको धारण गर्ने सवितादेवको सामर्थ्य कहिल्यै विनाश हुँदैन। सुन्दर हात भएका सवितादेव पृथ्वी र द्युलोक विस्तृत प्रेरित गर्छन्। सवितादेवको कर्म सत्य हो।

इन्द्रज्येष्ठान्बृहद्भ्यः पर्वतेभ्यः क्षयाँ एभ्यः सुवसि पस्त्यावतः।
यथायथा पतयन्तो वियेमिर एवैव तस्थुः सवितः सवाय ते ॥५॥
हे सवितादेव ! अत्यधिक धनवान् इन्द्रदेव हामी याजकका लागि वन्दनीय छन्। हामी मानिसलाई तिमी विशाल पर्वतभन्दा पनि ठूला बनाइदेऊ। यी याजकलाई तिमी घरसहितको स्थान प्रदान गर, त्यसबाट उनीहरू तिमी जाने बेलामा तिमीबाट नियन्त्रित होऊन् र तिम्रो आज्ञाअनुसार चलून्।

ये ते त्रिरहन्त्सवितः सवासो दिवेदिवे सौभगमासुवन्ति।
इन्द्रो द्यावापृथिवी सिन्धुरद्भिरादित्यैर्नो अदितिः शर्म यंसत् ॥६॥
हे सवितादेव ! तिम्रा लागि दिनको तीन पटक सधैं सौभाग्यजनक सोमरस पेलेर तयार गर्ने याजकहरूका लागि र हाम्रा लागि इन्द्रदेव, द्यावापृथिवी, पानीले भरिएका नदी र आदित्यसँगै अदितिदेवीले सुख प्रदान गरून्।

[सूक्त – ५५]

ऋषि – वामदेव गौतम। देवता – विश्वेदेवा। छन्द – त्रिष्टुप् गायत्री।

को वस्त्राता वसवः को वरूता द्यावाभूमी अदिते त्रासीथां नः।
सहीयसो वरुण मित्र मर्तात्को वोऽध्वरे वरिवो धाति देवाः ॥१॥
हे वसु हो ! तिमीहरूमध्ये रक्षक को हो ? दुःख निवारण गर्ने को हो ? हे अखण्डनीय द्यावापृथिवी ! हाम्रो रक्षा गर। हे मित्रावरुण ! बलशाली शत्रुबाट हाम्रो रक्षा गर। हे देवताहरू हो ! तिमीहरूमध्ये कसले यज्ञमा ऐश्वर्य प्रदान गर्दछन् ?

प्र ये धामानि पूर्व्याण्यर्चान्वि यदुच्छान्वियोतारो अमूराः।
विधातारो वि ते दधुरजस्रा ऋतधीतयो रुरुचन्त दस्माः ॥२॥
स्तुति गर्नेलाई पुरानो ठाउँ प्रदान गर्ने र अज्ञानरूपी अन्धकार हटाउने, फलप्रदायक देवताले सधैं असल फल प्रदान गर्दछन्। सत्कर्म गर्ने देवता हेर्न पनि राम्रा छन्।

प्र पस्त्याऽमदितिं सिन्धुमर्कैः स्वस्तिमीळे सख्याय देवीम्।
उभे यथा नो अहनी निपात उषासानक्ता करतामदब्धे ॥३॥
सबैलाई आश्रय प्रदान गर्ने अदिति, सिन्धु र स्वस्तिदेवीको मित्रता प्राप्त गर्न हामी स्तोत्रले प्रार्थना गर्दछौं। द्यावापृथिवीले हाम्रो सुरक्षा गरून्। रात र दिनकी अधिष्ठात्री देवी उषासानक्ताले हाम्रो कामना सम्पादित गरून्।

व्यर्यमा वरुणश्चेति पन्थामिषस्पतिः सुवितं गातुमग्निः।
इन्द्राविष्णू नृवदु षु स्तवाना शर्म नो यन्तममवद्वरूथम् ॥४॥
अर्यमा र वरुणदेव यज्ञको मार्ग प्रकाशित गरून् र अन्नका अधिपति अग्निदेव हर्ष प्रदान गर्ने मार्ग देखाऊन्। इन्द्र र विष्णुदेव राम्रो प्रशंसा पाएर सन्तानसँगै सुख प्रदान गरून्।

आ पर्वतस्य मरुतामवांसि देवस्य त्रातुरव्रि भगस्य।
पात्पतिर्जन्यादंहसो नो मित्रो मित्रियादुत न उरुष्येत् ॥५॥
पर्वत, मरुद्गण र संरक्षक भगदेवका रक्षणसामर्थ्यको हामी कामना गर्दछौं। सबैको पालनपोषण गर्ने वरुणदेव मानिसलाई पापबाट जोगाऊन्। मित्रदेवले मित्रभावले हाम्रो सुरक्षा गरून्।

नू रोदसी अहिना बुध्न्येन स्तुवीत देवी अप्येभिरिष्टैः।
समुद्रं न संचरणे सनिष्यवो घर्मस्वरसो नद्यो३ अप व्रन् ॥६॥
हे द्यावापृथिवी ! ऐश्वर्य प्राप्त गर्ने कामना भएका मानिसले समुद्रका बीचमा पुग्नका लागि प्रार्थना गरेझैं इच्छा लागेको कार्यको लाभ उठाउनका लागि अहिर्बुध्न्य नामका देवतासँगै हामी तिम्रो प्रार्थना गर्दछौं। तेज ध्वनि गर्ने सरिताले तिमीलाई मुक्त गरून्।

देवैर्नो देव्यदितिर्नि पातु देवस्त्राता त्रायतामप्रयुच्छन्।
नहि मित्रस्य वरुणस्य धासिमर्हामसि प्रमियं सान्वग्नेः ॥७॥

देवताहरूसँगै अदिति देवीले हाम्रो पोषण गरून् र संरक्षण गर्ने इन्द्रदेवले अल्छ्याइँ नगरीकन हाम्रो सुरक्षा गरून्। हामी मित्र, वरुण र अग्निदेवका सोमरूपी पोषक अन्नमा बाधा पार्दैनौं। उनलाई यज्ञ आदि कर्मले सम्पन्न बनाउँछौं।

अग्निरीशे वसव्यस्याग्निर्महः सौभगस्य। तान्यस्मभ्यं रासते ॥८॥

अग्निदेव ऐश्वर्य र सौभाग्यका अधिपति हुन्, त्यसैले हामीलाई उनले ऐश्वर्य र सौभाग्य प्रदान गरून्।

उषो मघोन्या वह सूनृते वार्या पुरु। अस्मभ्यं वाजिनीवति ॥९॥

हे धनसम्पन्न सत्यरूपी वचन भएका र अन्न प्रदान गर्ने उषादेवी ! हामीलाई अत्यन्त मनोहर धन प्रदान गर।

तत्सु नः सविता भगो वरुणो मित्रो अर्यमा। इन्द्रो नो राधसा गमत् ॥१०॥

सविता, भग, मित्रावरुण, इन्द्र र अर्यमा देवताहरूसँग आउने ऐश्वर्य हामीलाई सबै देवताले दिऊन्।

[सूक्त - ५६]

ऋषि - वामदेव गौतम। देवता - द्यावापृथिवी। छन्द - त्रिष्टुप् गायत्री।

मही द्यावापृथिवी इह ज्येष्ठे रुचा भवतां शुचयद्भिरर्कैः।
यत्सीं वरिष्ठे बृहती विमिन्वन्नुवद्धोक्षा पप्रथानेभिरेवैः ॥१॥

अत्यन्त श्रेष्ठ र बृहद् द्यावापृथिवी हावाले प्रेरित हुने बादलले चारै तिरबाट ढाकिएपछि ध्वनि उत्पन्न हुन्छ। ज्येष्ठ र महान् द्यावापृथिवी तेजस्वी स्तोत्रले तेजसम्पन्न होऊन्।

देवी देवेभिर्यजते यजत्रैरमिनती तस्थतुरुक्षमाणे।
ऋतावरी अद्रुहा देवपुत्रे यज्ञस्य नेत्री शुचयद्भिरर्कैः ॥२॥

पूजन गर्न योग्य, हिंसा नगर्ने अभीष्टको वर्षा गराउने, यज्ञले सम्पन्न, विद्रोह नगर्ने, देवता उत्पन्न गराउने र यज्ञ सम्पन्न गर्ने ओजस्वी द्यावापृथिवी देवीहरू देवताहरूसँगै यजन योग्य तेजस्वी मन्त्रले सम्पन्न होऊन्।

स इत्स्वपा भुवनेष्वास य इमे द्यावापृथिवी जजान।
उर्वी गभीरे रजसी सुमेके अवंशे धीरः शच्या समैरत् ॥३॥

सद्बुद्धि प्रदान गर्ने देवताहरूका कौशलले विस्तृत, गम्भीर र आधाररहित द्यावापृथिवी उत्पन्न भए र दुवै लोक बनिए। ती सत्कर्म गर्ने देवताहरू संसारमा व्याप्त छन्।

नू रोदसी बृहद्भिर्नो वरूथैः पत्नीवद्भिरिषयन्ती सजोषाः।
उरूची विश्वे यजते नि पातं धिया स्याम रथ्यः सदासाः ॥४॥

हे द्यावापृथिवी ! तिमीहरू दुवै हाम्रा लागि अन्न प्रदान गर्ने कामना भएका र आपसमा प्रेमपूर्वक रहने हौ। तिमीहरू दुवै विशाल क्षेत्र भएका, सबैबाट पुजिने हुनाले हामीलाई गृहिणीले सम्पन्न असल भवन प्रदान गर र हाम्रो सुरक्षा गर। हामी आफ्ना सत्कर्मले दास र रथले सम्पन्न होऔं।

प्र वां महि द्यवी अभ्युपस्तुतिं भरामहे। शुची उप प्रशस्तये ॥५॥

हे पवित्र र तेजस्वी आकाश र भूमण्डल ! स्तुति गर्नका लागि नजिकै आएर हामी तिमीहरू दुवैका लागि पर्याप्त मात्रामा स्तुति उच्चारण गर्दछौं।

पुनाने तन्वा मिथः स्वेन दक्षेण राजथः। ऊह्याथे सनादृतम् ॥६॥

हे दुवै देवी हो ! आफ्ना अनन्त शक्तिले तिमीहरू द्युलोक र पृथिवी यी दुवैलाई पवित्र गराउँदै प्रदीप्त हुन्छौ र सधैं यज्ञको कार्य निर्वाह गर्दछौ।

मही मित्रस्य साधथस्तरन्ती पिप्रती ऋतम्। परि यज्ञं नि षेदथुः ॥७॥

हे व्यापक आकाश र भूदेवीहरू हो ! तिमीहरू आफ्ना सखाजस्ता यजमानलाई अभीष्ट फल प्रदान गर्दछौ, यज्ञको पूर्णताका लागि संरक्षण दिँदै आधार प्रदान गर्दछौ।

[सूक्त – ५७]

ऋषि – वामदेव गौतम। देवता – क्षेत्रपति। छन्द – अनुष्टुप् त्रिष्टुप्।

**क्षेत्रस्य पतिना वयं हितेनेव जयामसि।**
**गामश्वंपोषयित्न्वा स नो मृडातीदृशे ॥१॥**

सखाजस्तै हित गर्ने क्षेत्रपतिका सहयोगले हामी खेत जित्दछौं। उनै क्षेत्रपतिदेवले गाई र अश्व बलियो बनाउने ऐश्वर्य प्रदान गरून् र त्यस ऐश्वर्यले हामीलाई खुसी गराऊन्।

**क्षेत्रस्य पते मधुमन्तमूर्मिं धेनुरिव पयो अस्मासु धुक्ष्व।**
**मधुश्चुतं घृतमिव सुपूतमृतस्य नः पतयो मृडयन्तु ॥२॥**

हे क्षेत्रपतिदेव ! गाईले दुध दिएझैं हामीलाई मधुरता र प्रवाहसम्पन्न जल प्रदान गर। मिठास बर्साएर पवित्रता प्रदान गर्ने जलले दिएजस्तै सुख सत्कर्मका पालक भएर हामीलाई प्रदान गर।

**मधुमतीरोषधीर्द्याव आपो मधुमन्नो भवत्वन्तरिक्षम्।**
**क्षेत्रस्य पतिर्मधुमान्नो अस्त्वरिष्यन्तो अन्वेनं चरेम ॥३॥**

वनको औषधि हाम्रा लागि मधुरताले पूर्ण होस् र द्युलोक, अन्तरिक्ष र जल हाम्रा लागि मिठा होऊन्। क्षेत्रका स्वामी हाम्रा लागि मधुसम्पन्न होऊन्। हामी उनको अनुसरण गरौं तर शत्रुद्वारा हिंसित नहोऔं।

**शुनं वाहाः शुनं नरः शुनं कृषतु लाङ्गलम्।**
**शुनं वरत्रा बध्यन्तां शुनमष्ट्रामुदिङ्गय ॥४॥**

अश्व आदि वाहन हाम्रा लागि सुखदायक होऊन्। मानिस हाम्रा लागि हर्षदायक होऊन् र हलो खुसी भएर खेतीको काम गरोस्। खेतमा खुसीसाथ हलो चलोस्। हलामा जुवा सजिलैसित बाँधियोस् र चाबुक पनि सजिलैसित प्रयुक्त होस्।

**शुनासीराविमां वाचं जुषेथां यद्दिवि चक्रथुः पयः। तेनेमामुप सिञ्चतम् ॥५॥**

हे शुना र सीर ! तिमीहरू दुवै हाम्रो यो प्रार्थना सुनेर स्वीकार गर। तिमीहरू दुवैले द्युलोकमा जल उत्पन्न गरेका छौ, उसै जलद्वारा यस धर्तीलाई सेचन गर।

**अर्वाची सुभगे भव सीते वन्दामहे त्वा।**
**यथा नः सुभगाससि यथा नः सुफलाससि ॥६॥**

हे श्रेष्ठ ऐश्वर्य प्रदान गर्ने सीता ! हामीलाई कृपा गर। हामी तिम्रो वन्दना गर्दछौं। त्यसबाट हामीलाई तिमी असल ऐश्वर्य प्रदान गर र राम्रो फल प्रदान गर।

**इन्द्रः सीतां नि गृह्णातु तां पूषानु यच्छतु।**
**सा नः पयस्वती दुहामुत्तरामुत्तरां समाम् ॥७॥**

इन्द्रदेवले अनौ समातेर हलाको सीता (सियो) बसाऊन्। पूषादेवले त्यसको हेरचाह गरून्। त्यसो भएपछि धर्ती असल खाद्यान्न र जलले परिपूर्ण होऊन् र हाम्रा लागि धान्य आदिको दोहन गरून्।

**शुनं नः फाला वि कृषन्तु भूमिं शुनं कीनाशा अभि यन्तु वाहैः।**
**शुनं पर्जन्यो मधुना पयोभिः शुनासीरा शुनमस्मासु धत्तम् ॥८॥**

हलाको तल्लो भागमा लगाइएको फलामे फाली राम्ररी खेत जोतोस् र किसान गोरुका पछि लागेर सजिलैसित हिँडोस्। हे वायु र सूर्यदेव हो ! तिमीहरू दुवै हविष्यले प्रसन्न भएर पृथ्वीलाई जलले सिञ्चित गरीकन यी औषधिलाई असल फलयुक्त गराओ।

[सूक्त – ५८]

ऋषि – वामदेव गौतम। देवता – अग्नि। छन्द – जगती त्रिष्टुप्।

**समुद्रादूर्मिर्मधुमाँ उदारदुपांशुना सममृतत्वमानट्।**
**घृतस्य नाम गुह्यं यदस्ति जिह्वा देवानाममृतस्य नाभिः ॥१॥**

समुद्रबाट मधुर छाल मास्तिर उठ्दछ। त्यसले सोमरससँगै अमृतत्त्व प्राप्त गर्दछ। घिउको रहस्यपूर्ण रूप नै देवताको जिब्रो र अमृतको केन्द्र हो।

**वयं नाम प्र ब्रवामा घृतस्यास्मिन्यज्ञे धारयामा नमोभिः।**
**उप ब्रह्मा शृणवच्छस्यमानं चतुः शृङ्गोऽवमीद्गौर एतत् ॥२॥**

हामी याजकहरू त्यस घिउको स्तुति गर्दछौं। यस यज्ञमण्डपमा नमस्कार गर्दै हामी त्यसलाई धारण

गर्दछौं। हामीबाट गाइने स्तुति ब्रह्माजीले सुनून्। चार वेदरूपी सिङ भएका, गोरो वर्णका देवताले यस संसारको सृष्टि गरे।

**चत्वारि शृङ्गा त्रयो अस्य पादा द्वे शीर्षे सप्त हस्तासो अस्य।**
**त्रिधा बद्धो वृषभो रोरवीति महो देवो मर्त्यां आ विवेश ॥३॥**

यज्ञका अग्निदेवका चार वटा सिङ, तीन वटा खुट्टा, दुई टाउका र सात वटा हात छन्। ती बलशाली वृषभ देवता तीन किसिमले बद्ध भएर ध्वनि गर्दछन् र मानिसका बीचमा प्रवेश गर्दछन्।

**त्रिधा हितं पणिभिर्गुह्यमानं गवि देवासो घृतमन्वविन्दन्।**
**इन्द्र एकं सूर्य एकं जजान वेनादेकं स्वधया निष्टतक्षुः ॥४॥**

देवताले व्यापारीबाट गाईका बीचमा तीन किसिमले लुकाएर राखेको घिउ थाहा पाए। तिनमध्ये सबैभन्दा पहिलो इन्द्रदेवले निकाले, दोस्रो आदित्यदेवले निकाले र तेस्रो देवताहरूले आफ्ना बलले अग्निबाट निकाले।

**एता अर्षन्ति हृद्यात्समुद्राच्छतव्रजा रिपुणा नावचक्षे।**
**घृतस्य धारा अभि चाकशीमि हिरण्ययो वेतसो मध्य आसाम् ॥५॥**

धाराहरू मनोहर समुद्रभन्दा सयौं गतिले प्रवाहित भइरहेका छन्। शत्रुले त्यसलाई देख्न सक्दैनन्। घिउका ती धारा हामी देख्छौं। ती धाराका बीचमा विद्यमान अग्नि पनि हामी देख्न सक्छौं।

**सम्यक्स्रवन्ति सरितो न धेना अन्तर्हृदा मनसा पूयमानाः।**
**एते अर्षन्त्यूर्मयो घृतस्य मृगा इव क्षिपणोरीषमाणाः ॥६॥**

आँतबाट निस्केको र चित्तले शुद्ध गरेको तेज धारा खुसीको नदीझैं आनन्दले बग्दछ। सिकारीदेखि तर्सिएर हरिण भागेझैं गरी घिउको धारा तीव्र गतिले प्रवाहित हुन्छ।

**सिन्धोरिव प्राध्वने शूघनासो वातप्रमियः पतयन्ति यह्वाः।**
**घृतस्य धारा अरुषो न वाजी काष्ठा भिन्दन्नूर्मिभिः पिन्वमानः ॥७॥**

नदीको पानी तेज गतिमा ओरालोतिर बगेझैं वायुसमानको वेगले घिउको धारा अग्नितिर जाँदै छ। घिउको धारा तेजस्वी घोडाझैं आफ्नो परिधिलाई नाघेर लहरले अझ माथि उठ्दछन्।

**अभि प्रवन्त समनेव योषाः कल्याण्यः स्मयमानासो अग्निम्।**
**घृतस्य धाराः समिधो नसन्त ता जुषाणो हर्यति जातवेदाः ॥८॥**

विचार मिलेका कारण हाँसिरहने स्त्री आफ्ना पतितिर गएझैं गरी घिउको धारा अग्नितिर जाँदै हुन्छ। घिउको धारा प्रज्वलित हुँदै सबै ठाउँमा व्याप्त हुन्छ। सबै कुराको ज्ञान भएका अग्निदेव हर्षित भएर त्यस धाराकै इच्छा गर्दछन्।

**कन्याइव वहतुमेतवा उ अञ्ज्यञ्जाना अभि चाकशीमि।**
**यत्र सोमः सूयते यत्र यज्ञो घृतस्य धारा अभि तत्पवन्ते ॥९॥**

सोमरस पेलेर तयार गरिने र यज्ञ सम्पन्न गरिने ठाउँमा घिउको धारा प्रवाहित हुन्छ। यो धारा वरको पछि लाग्न सिँगारिएकी कन्याझैं प्रवाहित भएको हामी देख्दछौं।

**अभ्यर्षत सुष्टुतिं गव्यमाजिमस्मासु भद्रा द्रविणानि धत्त।**
**इमं यज्ञं नयत देवता नो घृतस्य धारा मधुमत्पवन्ते ॥१०॥**

हे याजक हो ! देवताका लागि स्तुति गर। हे देवता हो ! हामी याजकका लागि प्रशंसनीय ऐश्वर्य, गाई र विजय धारण गर। हाम्रो यो यज्ञ तिमी देवतासमक्ष पुऱ्याऊ। घिउका मधुर धारा प्रवाहित भएको छ।

**धामन्ते विश्वं भुवनमधि श्रितमन्तः समुद्रे हृद्यन्तरायुषि।**
**अपामनीके समिथे य आभृतस्तमश्याम मधुमन्तं त ऊर्मिम् ॥११॥**

हे परमात्मा ! तिम्रो तेज समुद्रका बीचमा बडवाग्निका रूपमा, आकाशमा सूर्यदेवका रूपमा, हृदयका बीचमा वैश्वानरका रूपमा, अन्नमा प्राणका रूपमा, जलमा विद्युत्का रूपमा र युद्धमा शौर्याग्निका रूपमा विद्यमान छ। सारा संसार नै तिमीमा आश्रित छ। तिम्रो त्यो मिठासले पूर्ण रसको उपयोग गर्नमा हामी समर्थ होऔं।

**॥इति चतुर्थं मण्डलं समाप्तम्॥**
चौथो मण्डल सकियो

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ पञ्चमं मण्डलम्॥

॥पाँचौं मण्डल॥

[सूक्त - १]

ऋषि - बुध आत्रेय। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**अबोध्यग्निः समिधा जनानां प्रति धेनुमिवायतीमुषासम्।**
**यह्वाइव प्र वयामुज्जिहानाः प्र भानवः सिस्रते नाकमच्छ ॥१॥**

उषाकालमा गाई जागेझैं याजकका समिधाले प्रज्वलित भई जागेका दिव्य ज्वाला रुखको हाँगो मौलाएझैं द्युलोकसम्म फैलिन्छन्।

**अबोधि होता यजथात देवानूर्ध्वो अग्निः सुमनाः प्रातरस्थात्।**
**समिद्धस्य रुशददर्शि पाजो महान्देवस्तमसो निरमोचि ॥२॥**

यज्ञका आधार मानिएका अग्निदेवलाई यजन कार्यका निम्ति देवताहरूले प्रदीप्त गर्दछन्। बिहानका अग्निदेव ऊर्ध्वगामी असल मानिसझैं हुन्छन्। त्यस बेला यिनको तेजस्वी रूप प्रत्यक्ष भएर उठ्दछ। यस्ता महान् देवताले संसारलाई अन्धकारबाट मुक्त गराउँछन्।

**यदीं गणस्य रशनामजीगः शुचिरङ्क्ते शुचिभिर्गोभिरग्निः।**
**आद्दक्षिणा युज्यते वाजयन्त्युत्तानामूर्ध्वो अधयज्जुहूभिः ॥३॥**

बाधा पुऱ्याउने अन्धकार हटेपछि आफ्ना शुभ्र तेजस्वी किरणले अग्निदेव संसारलाई प्रकाशित गराउँछन्। यिनलाई बल पुऱ्याउनका लागि घिउका धारा पात्रबाट बग्न थालेपछि अग्निदेव माथि उठ्छन् र जिब्राले घिउको धारा पान गर्दछन्।

**अग्निमच्छा देवयतां मनांसि चक्षूंषीव सूर्ये सं चरन्ति।**
**यदीं सुवाते उषसा विरूपे श्वेतो वाजी जायते अग्रे अह्नाम् ॥४॥**

मानिसका आँखाले सूर्योदयको प्रतीक्षा गरेझैं देवताको यजन गर्नेहरूको मन अग्नि दर्शनका कामनाले छटपटाउँछ। विचित्र रूप हुने उषासँगै आकाश र पृथिवीले उज्यालो कान्तियुक्त र बलिष्ठ अग्निदेवलाई प्रकट गर्दछन्।

**जनिष्ट हि जेन्यो अग्रे अह्नां हितो हितेष्वरुषो वनेषु।**
**दमेदमे सप्त रत्ना दधानोऽग्निर्होता नि षसादा यजीयान् ॥५॥**

उषाकालमा योग्य अग्निदेव उत्पन्न हुन्छन्। वनका काठमा अग्निदेव हितकारी रूपमा प्रदीप्त हुन्छन्। अग्निले प्रत्येक घरमा सात रत्नरूपी दीप्ति धारण गर्दछन् र यज्ञको योग्य होताका रूपमा प्रतिष्ठित हुन्छन्।

**अग्निर्होता न्यसीदद्यजीयानुपस्थे मातुः सुरभा उ लोके।**
**युवा कविः पुरुनिःष्ठ ऋतावा धर्ता कृष्टीनामुत मध्य इद्धः ॥६॥**

यज्ञको उपयुक्त होताका रूपमा प्रतिष्ठित अग्निदेव माताका काखमा सुरक्षित वेदीमा विराजित हुन्छन्। तरुण, विद्वान, अति निष्ठावान, सत्यका स्वरूप र धारण गर्न योग्य अग्निदेव मानिसहरूका माझमा प्रदीप्त हुन्छन्।

**प्र णु त्यं विप्रमध्वरेषु साधुमग्निं होतारमीळते नमोभिः।**
**आ यस्ततान रोदसी ऋतेन नित्यं मृजन्ति वाजिनं घृतेन ॥७॥**

अग्निदेव आफ्ना सामर्थ्यले द्यावापृथिवीलाई परिपूर्ण गराउँछन्। यजमानहरू ज्ञानी, यज्ञकार्य सिद्ध गर्ने होतारूपी अग्निदेवलाई स्तोत्रले स्तुति गर्दछन्। यजमानहरू अन्नका स्वामी अग्निदेवलाई सधैं घिउको आहुति दिएर यजन गर्दछन्।

मार्जाल्यो मृज्यते स्वे दमूनाः कविप्रशस्तो अतिथिः शिवो नः ।
सहस्रशृङ्गो वृषभस्तदोजा विश्वाँ अग्ने सहसा प्रास्यन्यान् ॥८॥

पवित्र गराउने, विकृति हटाउने, ज्ञानीले प्रशंसा गर्ने, अतिथिजस्तै पूजनीय, हामी सबैको भलो गर्ने ओजस्वी अग्निदेव आफ्ना स्थानमा पुजिन्छन्। हे अग्निदेव ! तिमी आफ्ना सामर्थ्यले सबैलाई परिपूर्ण गराउँछौ।

प्र सद्यो अग्ने अत्येष्यन्यानाविर्यस्मै चारुतमो बभूथ।
ईडेन्यो वपुष्यो विभावा प्रियो विशामतिथिर्मानुषीणाम् ॥९॥

हे अग्निदेव ! तिमी यज्ञमा सुन्दर रूपले प्रकट हुन्छौ। अरू सबैलाई जितेर तिमी चाँडै नै अगाडि बढ्दछौ। तिमीलाई मानिसले अत्यन्त स्तुति गर्दछन्। तिमी सुन्दर रूपका, प्रकाशसम्पन्न, प्रिय र प्रजाका अतिथिजस्तै छौ।

तुभ्यं भरन्ति क्षितयो यविष्ठ बलिमग्ने अन्तित ओत दूरात्।
आ भन्दिष्ठस्य सुमतिं चिकिद्धि बृहत्ते अग्ने महि शर्म भद्रम् ॥१०॥

हे युवा अग्निदेव ! उपासकहरू टाढा वा नजिकैबाट तिमीलाई भोज्य पदार्थ अर्पित गर्दछन्। तिमी शुद्ध उच्चारणले स्तुति गर्नेहरूका सद्‌बुद्धि चिन। हे अग्निदेव ! तिम्रो महान् आश्रय अति कल्याणकारी छ।

आद्य रथं भानुमो भानुमन्तमग्ने तिष्ठ यजतेभिः समन्तम्।
विद्वान्पथीनामुर्व१न्तरिक्षमेह देवान्हविरद्याय वक्षि ॥११॥

हे तेजस्वी अग्निदेव ! तिमी तेजस्वी छौ र सुन्दर रथमा पूज्य देवताहरूसित रथमा बसेर आऊ। देवताहरूलाई चिनेर हविष्यान्न ग्रहण गर्नका लागि तिमी व्यापक अन्तरिक्षका सुगम मार्गबाट यस यज्ञमा ल्याऊ।

अवोचाम कवये मेध्याय वचो वन्दारु वृषभाय वृष्णे।
गविष्ठिरो नमसा स्तोममग्नौ दिवीव रुक्ममुरुव्यञ्चमश्रेत् ॥१२॥

त्रिकालदर्शी, शक्तिशाली र सेचन गर्नका लागि सक्षम यज्ञका अग्निलाई स्तोत्र पाठ गर्दै हामी स्तुति गर्दछौँ। द्युलोकमा प्रकाशमान आदित्यलाई सन्ध्योपासनाका समयमा विशिष्ट महिमाले युक्त प्रार्थना समर्पित गरेझैँ स्थिर वाणी भएका हविदाताले आह्वान गर्दै अग्निमा मन्त्रोच्चारणपूर्वक हविष्यान्न समर्पित गर्दछन्।

### [सूक्त - २]

**ऋषि** - कुमार आत्रेय। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप् शक्वरी।

कुमारं माता युवतिः समुब्धं गुहा बिभर्ति न ददाति पित्रे।
अनीकमस्य न मिनज्जनासः पुरः पश्यन्ति निहितमरतौ ॥१॥

तरुणी माता आफ्ना गर्भको पुत्र पितालाई नदिईकन रात्री स्वयं लुकाएर पोषण गर्दछिन्। यसरी गोप्य रहेको शिशु प्रकट भएपछि मानिसहरूले उसलाई साक्षात् देख्दछन्। त्यसपछि उसको तेज मानिसहरूले विनाश गर्न सक्दैनन्।

कमेतं त्वं युवते कुमारं पेषी बिभर्षि महिषी जजान।
पूर्वीर्हि गर्भः शरदो ववर्धापश्यं जातं यदसूत माता ॥२॥

हे महान् तरुणी ! तिमी बालकलाई गर्भमा धारण गर्दछ्यौ, उत्पन्न गर्दछ्यौ र त्यसलाई जतनसाथ पालनपोषण गर्दछ्यौ। गर्भमा यो बालक पहिले अनेकौँ वर्षसम्म बढ्दछ। तिमीले यसलाई उत्पन्न गरेछौ उत्पन्न भएको बालक सबैले देखून्।

हिरण्यदन्तं शुचिवर्णमारात्क्षेत्रादपश्यमायुधा मिमानम्।
ददानो अस्मा अमृतं विपृक्वत्किं मामनिन्द्राः कृणवन्ननुक्थाः ॥३॥

हामीले नजिकैबाट सुनौलो ज्वाला र उज्यालो वर्ण भएका, आयुधरूपी दीप्तिले सम्पन्न अग्निदेवलाई देख्यौँ। हामीले उनलाई अमृतमय स्तोत्र अर्पण गर्‍यौँ। इन्द्रदेवलाई नमान्ने र स्तुति नगर्नेहरूले हामीलाई यो के गर्लान् र ?

क्षेत्रादपश्यं सनुतश्चरन्तं सुमद्यूथं न पुरु शोभमानम्।
न ता अगृभ्रन्नजनिष्ट हि षः पलिक्नीरिद्युवतयो भवन्ति ॥४॥

पशुको बथानजस्तै, अरणीरूपी आफ्ना स्थानमा लुकेका अग्निलाई हामीले डुल्दै गर्दा देखेका छौं। अग्निदेव उत्पन्न भएपछि उनको दीप्त ज्वाला स्पर्श गर्न सकिँदैन। युवती बुढिँदै गएझैं सेलाउन लागेका ज्वाला पनि हविष्यान्न पाएपछि जीर्ण अवस्थाबाट फेरि युवतीकै रूपमा पुष्ट हुन्छन्।

के मे मर्यकं वि यवन्त गोभिर्न येषां गोपा अरणश्चिदास।
य ईं जगृभुरव ते सृजन्त्वाजाति पश्व उप नश्चिकित्वान् ॥५॥

जोसुकै मानिस राष्ट्रको स्वामी र भूमिपति हुँदैन। हामीलाई भूमिबाट छुट्याउन खोज्ने को होला ? जसले भूमिमाथि अतिक्रमण गर्दछन्, तिनीहरूबाट हामीलाई मुक्त गराऊ। ज्ञानसम्पन्न अग्निदेव हाम्रा पशुका नजिकै गोठालोजस्तै भएर रहुन्।

वसां राजानं वसतिं जनानामरातयो नि दधुर्मर्त्येषु।
ब्रह्माण्यत्रेरव तं सृजन्तु निन्दितारो निन्द्यासो भवन्तु ॥६ ॥

अग्निदेव सबै प्राणीका स्वामी भएर आश्रय दिन्छन्। अग्निदेवलाई शत्रुले मर्त्यलोकमा लुकाए। अत्रिका वंशजले मन्त्रयुक्त स्तोत्रले यिनलाई मुक्त गरे। अग्निदेवलाई निन्दा गर्नेहरू नै निन्दाका पात्र हुन्।

शुनश्चिच्छेपं निदितं सहस्राद्यूपादमुञ्चो अशमिष्ट हि षः।
एवास्मदग्ने वि मुमुग्धि पाशान्होतश्चिकित्व इह तू निषद्य ॥७॥

हे अग्निदेव ! शुनःशेप ऋषिले स्तुति गरेपछि उनलाई मौलाका हजार बन्धनबाट मुक्त गरायौ। हे मेधावी अग्निदेव ! तिमी होताका रूपमा यस यज्ञमा बस र हामीलाई पनि बन्धनबाट मुक्त गराऊ।

हृणीयमानो अप हि मदैयेः प्र मे देवानां व्रतपा उवाच।
इन्द्रो विद्वाँ अनु हि त्वा चचक्ष तेनाहमग्ने अनुशिष्ट आगाम् ॥८॥

हे अग्निदेव ! तिमी रिसाएपछि हामीबाट टाढा जान्छौ भनेर नियमपालक इन्द्रदेवले हामीलाई सिकाएका छन्। विद्वान् इन्द्रदेवले तिमीलाई देखेका छन् र उनैबाट प्रेरित भएर हामी तिम्रा अगाडि उपस्थित छौं।

वि ज्योतिषा बृहता भात्यग्निराविर्विश्वानि कृणुते महित्वा।
प्रादेवीर्मायाः सहते दुरेवाः शिशीते शृङ्गे रक्षसे विनिक्षे ॥९॥

अग्निदेव आफ्ना महान् तेजले प्रकाशित हुन्छन्। उनी आफ्ना महत्त्वले सबै पदार्थ प्रकट गर्दछन्। उनी आफ्ना सामर्थ्यले असुरको दुःखदायी माया विनाश गराउँछन्। राक्षसको विनाशका लागि आफ्ना ज्वालाहरूलाई तीक्ष्ण गराउँछन्।

उत स्वानासो दिवी षन्त्वग्नेस्तिग्मायुधा रक्षसे हन्तवा उ।
मदे चिदस्य प्र रुजन्ति भामा न वरन्ते परिबाधो अदेवीः ॥१०॥

अग्निका शब्द गर्ने ज्वालाहरू तीखा आयुधजस्तै भएर राक्षस विनाश गर्नका लागि द्युलोकमा प्रकट हुन्छन्। ती ज्वालाहरू फेरि पुष्ट भएर अति विकराल रूप धारण गर्दै राक्षसलाई मनग्गे सताउँछन्। आसुरी बाधाले अग्निदेवको सीमा रोक्न सक्दैन।

एतं ते स्तोमं तुविजात विप्रो रथं न धीरः स्वपा अतक्षम्।
यदीदग्ने प्रति त्वं देव हर्याः स्वर्वतीरप एना जयेम ॥११॥

हे अग्निदेव ! तिमी धैर्यवान् ज्ञानी भएर उत्तम कार्य गर्न अनेकौं रूपमा उत्पन्न हुन्छौ। रथ निर्माण गरेजस्तै मन लगाएर हामीले तिम्रा लागि स्तोत्र तयार पारेका छौं। हे अग्निदेव ! तिमी स्तोत्रले हर्षित भएर विजय र स्वर्गीय सुख प्राप्त गर।

तुविग्रीवो वृषभो वावृधानोऽशत्र्वर्यः समजाति वेदः। इतीममग्निमममृता
अवोचन्बर्हिष्मते मनवे शर्म यंसद्धविष्मते मनवे शर्म यंसत् ॥१२॥

असङ्ख्य ज्वाला भएका, खोजेको पुर्याइदिने, निर्बाध रूपमा बढ्ने, शत्रुविनाका अग्निदेवले श्रेष्ठ पुरुषलाई धन दिन्छन्। त्यसैले अमर देवताहरू अग्निदेवलाई कुशको आसन ओछ्याएर हवि प्रदान गर्ने याजकलाई निश्चित सुख देऊ भन्दछन्।

[सूक्त - ३]

ऋषि - वसुश्रुत आत्रेय। देवता - अग्नि मरुत्‌गण रुद्र विष्णु। छन्द - त्रिष्टुप्।

**त्वमग्ने वरुणो जायसे यत्त्वं मित्रो भवसि यत्समिद्धः।**
**त्वे विश्वे सहसस्पुत्र देवास्त्वमिन्द्रो दाशुषे मर्त्याय ॥१॥**

हे अग्निदेव ! तिमी प्रकट हुँदा वरुणजस्तै गुण भएका हुन्छौ र प्रदीप्त हुँदा मित्रजस्तै हुन्छौ। तिमीमा सम्पूर्ण देवताहरू स्थित छन्। हे बलका पुत्र अग्निदेव ! तिमी हविदाता यजमानका लागि इन्द्रदेवजत्तिकै पूज्य छौ।

**त्वमर्यमा भवसि यत्कनीनां नाम स्वधावन्गुह्यं बिभर्षि।**
**अञ्जन्ति मित्रं सुधितं न गोभिर्यद्दम्पती समनसा कृणोषि ॥२॥**

हे स्वधासम्पन्न अग्निदेव ! गुप्त नामले तिमी कन्याको नियन्त्रण गर्दछौ। पतिपत्नीबाट इन्द्रियरूपी गाईका रसले सिञ्चित भएका बेला उनीहरूलाई मन लागेको सुख दिन्छौ।

**तव श्रियो मरुतो मर्जयन्त रुद्र यत्ते जनिम चारु चित्रम्।**
**पदं यद्विष्णोरुपमं निधायि तेन पासि गुह्यं नाम गोनाम् ॥३॥**

हे अग्निदेव ! मरुत्‌हरू शोधन प्रक्रिया चलाएर तिम्रो शोभा बढाउँछन्। हे रुद्ररूप ! तिम्रो जन्म सुन्दर र विलक्षण छ। विष्णुदेवले तिमीलाई उपमा योग्य पद दिन्छन्। तिमी देवताहरूका यी गोप्य अनुग्रह संरक्षित गर।

**तव श्रिया सुदृशो देव देवाः पुरू दधाना अमृतं सपन्त।**
**होतारमग्निं मनुषो नि षेदुर्दशस्यन्त उशिजः शंसमायोः ॥४॥**

हे तेजस्वी अग्निदेव ! तिम्रा समृद्धिबाट देवताहरूले सुन्दर रूप र अत्यन्त तेज धारण गर्दै अमृततत्त्व प्राप्त गर्दछन्। मन गर्ने मानिसहरू स्तुतिसँग घिउको हवि चढाएर अग्निलाई होताका रूपमा सेवा गर्दछन्।

**न त्वद्धोता पूर्वो अग्ने यजीयान्न काव्यैः परो अस्ति स्वधावः।**
**विशश्च यस्या अतिथिर्भवासि स यज्ञेन वनवद्देव मर्तान् ॥५॥**

हे अग्निदेव ! तिमीभन्दा पहिले यज्ञ गर्ने होता, अरू कोही थिएन। हे अन्नले पुरिएका अग्निदेव ! तिम्रोजस्तो भविष्यमा काव्य स्तोत्र र स्तुति कसैले पाउनेछैन। तिमी जसको अतिथिका हुन्छौ, त्यस यजमानले यज्ञद्वारा पुत्रपौत्रादि सन्तान प्राप्त गर्दछ।

**वयमग्ने वनुयाम त्वोता वसूयवो हविषा बुध्यमानाः।**
**वयं समर्ये विदथेष्वह्नां वयं राया सहसस्पुत्र मर्तान् ॥६॥**

हे अग्निदेव ! हामी धनको कामना गर्दै तिमीलाई प्रज्वलित गरेर हविले प्रदीप्त गर्दछौं। तिम्रा अनुग्रहले हामी धनी र संरक्षित होऔं। हामी सानाठूला सबै युद्धमा नित्य विजय हासिल गरौं। हे बलका पुत्र अग्निदेव ! हामी धन र सन्तानले सुखी होऔं।

**यो न आगो अभ्येनो भरात्यधीदघमघशंसे दधात।**
**जही चिकित्वो अभिशस्तिमेतामग्ने यो नो मर्चयति द्वयेन ॥७॥**

हे अग्निदेव ! जुन मानिस हामीप्रति अपराध या पापपूर्ण व्यवहार गर्दछ, त्यस पापले उसै पापीलाई नाश गरिदेऊ। हे ज्ञानी अग्निदेव ! जसले हामीलाई पाप या अपराध गरेर दुःख दिन्छ, तिमी त्यस पापीलाई मारिदेऊ।

**त्वामस्या व्युषि देव पूर्वे दूतं कृण्वाना अयजन्त हव्यैः।**
**संस्थे यदग्न ईयसे रयीणां देवो मर्तैर्वसुभिरिध्यमानः ॥८॥**

हे अग्निदेव ! रातपछिको उषा काल हुँदा उहिलेका मानिसहरू तिमीलाई देवताको दूत बनाएर हविले यजन गर्दछन्। उनै असल मानिसहरूबाट प्रज्वलित भएर तिमी धन र योग्य धाम दिन्छौ।

**अव स्पृधि पितरं योधि विद्वान्पुत्रो यस्ते सहसः सून ऊहे।**
**कदा चिकित्वो अभि चक्षसे नोऽग्ने कदाँ ऋतचिद्यातयासे ॥९॥**

हे बलले उत्पन्न अग्निदेव ! पुत्रले पिताको सेवा गरेझैं जुन तिम्रो सेवा गर्ने विद्वान्‌लाई सङ्कट र पापबाट मुक्त गराऊ। हे ज्ञानी र यज्ञका पालक अग्निदेव ! हामीमाथि तिमी कृपादृष्टि कहिले राख्दछौ र हामीलाई कहिले असल मार्गतिर प्रेरित गर्दछौ ?

भूरि नाम वन्दमानो दधाति पिता वसो यदि तज्जोषयासे।
कुविद्देवस्य सहसा चकानः सुम्नमग्निर्वनते वावृधानः ॥१०॥

हे आश्रयदाता अग्निदेव ! तिमी पिताले झैँ पालन गर्दछौ। स्तुतिसित हवि चढाउने यजमानका हविले सन्तुष्ट भएर धेरै यश प्रदान गर्दछौ। उन्नतिशील, तेजयुक्त शोभा र अत्यन्त बल भएका अग्निदेव उपासकलाई ज्यादै सुख दिन्छन्।

त्वमङ्ग जरितारं यविष्ठ विश्वान्यग्ने दुरिताति पर्षि।
स्तेना अदृश्रन्रिपवो जनासोऽज्ञातकेता वृजिना अभूवन् ॥११॥

हे प्रिय युवा अग्निदेव ! तिमीले चिनेका चोर, निर्धालाई दुःख दिने कुटिल शत्रु र आउन लागेका त्यस्ता सम्पूर्ण सङ्कटबाट स्तोताहरूलाई तिमी जोगाऊ।

इमे यामासस्त्वद्रिगभूवन्वसवे वा तदिदागो अवाचि।
नाहायमग्निरभिशस्तये नो न रीषते वावृधानः परा दात् ॥१२॥

हे अग्निदेव ! हामी उपासकहरू स्तुति गर्न तिमीतिर फर्केका छौँ। हामी आफ्नो अपराध तिम्रा सामु निवेदन गरेर आश्रयको कामना गर्दछौँ। हाम्रा स्तुतिहरूले प्रवृद्ध हुने अग्निदेव हामीलाई निन्दक र हिंसकका तर्फबाट जोगाऊन्।

[सूक्त - ४]

ऋषि - वसुश्रुत आत्रेय। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

त्वामग्ने वसुपतिं वसूनामभि प्र मन्दे अध्वरेषु राजन्।
त्वया वाजं वाजयन्तो जयेमाभि ष्याम पृत्सुतीर्मर्त्यानाम् ॥१॥

हे तेजस्वी अग्निदेव ! तिमी धनका अधीश्वर हौ। हामी यज्ञमा तिम्रो स्तुति गर्दछौँ। बल पाउने रहर भएका हामी यजमानले तिमीबाट बल प्राप्त गरौँ। शत्रुका सेना समाप्त गरेर हामी विजय प्राप्त गरौँ।

हव्यवाडग्निरजरः पिता नो विभुर्विभावा सुदृशीको अस्मे।
सुगार्हपत्याः समिषो दिदीह्यस्मद्र्यक्सं मिमीहि श्रवांसि ॥२॥

हवन गरिने अग्निदेव सधैँ अजर रूपमा हुन्छन्। तिनी पिताका रूपमा हव्य आदिले पालन गर्दछन्। सर्वव्यापक रूपमा सर्वत्र प्रकाशित हुँदै उनी अति दर्शनीय देखिन्छन्। हे उत्तम गार्हपत्य अग्निदेव ! हाम्रा लागि उत्तम अन्न प्रदान गर। हामीलाई कीर्ति पाउन प्रेरित गर।

विशां कविं विश्पतिं मानुषीणां शुचिं पावकं घृतपृष्ठमग्निम्।
नि होतारं विश्वविदं दधिध्वे स देवेषु वनते वार्याणि ॥३॥

हे ऋत्विक्हरू हो ! मानिसका अधीश्वर, स्वयं पवित्र रहेर मानिसलाई पवित्र गराउने, दीप्तिमान शरीर भएका, सबै कुराको ज्ञान भएका अग्निदेवलाई यज्ञमा होताका रूपमा तिमीहरू धारण गर। देवताले रुचाउने खालको धन हामीलाई उनले प्रदान गरुन्।

जुषस्वाग्न इळया सजोषा यतमानो रश्मिभिः सूर्यस्य।
जुषस्व नः समिधं जातवेद आ च देवान्हविरद्याय वक्षि ॥४॥

हे अग्निदेव ! तिमी वेदीमा प्रज्वलित भएर सूर्यरश्मिसँगै हाम्रो स्तुति स्वीकार गर। हे सबै खालको ज्ञान भएका अग्निदेव ! तिमी हाम्रो समिधा ग्रहण गर्दै हवि ग्रहण गर्नका लागि देवताहरूलाई यहाँ लिएर आऊ।

जुष्टो दमूना अतिथिर्दुरोण इमं नो यज्ञमुप याहि विद्वान्।
विश्वा अग्ने अभियुजो विहत्या शत्रूयतामा भरा भोजनानि ॥५॥

घरमा आउने प्रिय र विनयशील अतिथिजस्तो पूज्य भएर तिमी हाम्रा यस यज्ञमा आऊ। सबै आक्रामक शत्रु नाश गरेर शत्रुजस्तो व्यवहार गर्नेको धन हामीकहाँ ल्याइदेऊ।

वधेन दस्युं प्र हि चातयस्व वयः कृण्वानस्तन्वे३स्वायै।
पिपर्षि यत्सहसस्पुत्र देवान्त्सो अग्ने पाहि नृतम वाजे अस्मान् ॥६॥

हे अग्निदेव ! आफ्ना शरीरका लागि अन्न ग्रहण गर्दै हाम्रा शत्रुलाई हतियारले नष्ट गर। हे बलका पुत्र अग्निदेव ! तिमी देवताहरूलाई तृप्त गर्दछौ। हे मनुष्यमा अग्रणी र स्तुत्य अग्निदेव ! युद्धमा तिमी हाम्रो रक्षा गर।

वयं ते अग्न उक्थैर्विधेम वयं हव्यैः पावक भद्रशोचे।
अस्मे रयिं विश्ववारं समिन्वास्मे विश्वानि द्रविणानि धेहि ॥७॥

हे अग्निदेव ! तिमीलाई हामी असल वचन र हविले सेवा गर्दछौं। हे पवित्रकर्ता, कल्याणकारी, तेजयुक्त अग्निदेव ! सबैले स्वीकार गर्ने खालको ऐश्वर्य हामीलाई प्रदान गर। हामीलाई सबै किसिमका धन हात पारिदेऊ।

अस्माकमग्ने अध्वरं जुषस्व सहसः सूनो त्रिषधस्य हव्यम्।
वयं देवेषु सुकृतः स्याम शर्मणा नस्त्रिवरूथेन पाहि ॥८॥

हे बलका पुत्र अग्निदेव ! जल, स्थल र पर्वत यी तीनै सदनमा निवास गर्ने तिमी हाम्रो यज्ञमा प्रतिष्ठित भएर हविष्यान्न सेवन गर। देवताहरूका लागि हामी असल कर्म गरौं। तीन खालका पापबाट हाम्रो रक्षा गर र उत्तम आश्रयस्थान दिएर सुखी बनाऊ।

विश्वानि नो दुर्गहा जातवेदः सिन्धुं न नावा दुरितातिं पर्षि।
अग्ने अत्रिवन्नमसा गृणानोऽस्माकं बोध्यविता तनूनाम् ॥९॥

हे सबै कुराको ज्ञान भएका अग्निदेव ! नाविकले नौकाद्वारा नदी तारिदिएझैं हामीलाई आउँदा सङ्कटहरूबाट पार लगाऊ। अत्रिको जस्तै अभिवादन योग्य स्तुति तिमीलाई हामी अर्पित गर्दछौं। तिमी हाम्रो निवेदन बुझ र हाम्रा शरीरको रक्षा गर।

यस्त्वा हृदा कीरिणा मन्यमानोऽमर्त्यं मर्त्यो जोहवीमि।
जातवेदो यशो अस्मासु धेहि प्रजाभिरग्ने अमृतत्वमश्याम् ॥१०॥

हे अग्निदेव ! तिमी अविनाशी हौ र हामी मरणशील छौं। स्तुतिले पूर्ण भएका हृदयले तिमीलाई नमस्कार गर्दै हामी बोलाउँछौं। हे ऐश्वर्यशाली अग्निदेव ! हामीलाई यश प्रदान गर। तिम्रो अविनाशी रूपजस्तै हाम्रा सन्तान होऊन्।

यस्मै त्वं सुकृते जातवेद उ लोकमग्ने कृणवः स्योनम्।
अश्विनं स पुत्रिणं वीरवन्तं गोमन्तं रयिं नशते स्वस्ति ॥११॥

हे ऐश्वर्यका स्वामी अग्निदेव ! तिमी श्रेष्ठ कर्म गर्ने यजमानमाथि अनुग्रह गर्दछौ। अश्व, वीर पुत्र र गाईहरूले युक्त कल्याणकारी ऐश्वर्य त्यस्ता यजमानले प्राप्त गर्दछन्।

## [सूक्त – ५]

ऋषि – वसुश्रुत आत्रेय। देवता – आप्रीसूक्त। छन्द – गायत्री।

सुसमिद्धाय शोचिषे घृतं तीव्रं जुहोतन। अग्नये जातवेदसे ॥१॥

असल, राम्ररी प्रज्वलित, जाज्वल्यमान, सर्वज्ञ, देदीप्यमान यज्ञाग्निमा हामी शुद्ध घिउ पगालेर आहुति प्रदान गरौं।

नराशंसः सुषूदतीमं यज्ञमदाभ्यः। कविर्हि मधुहस्त्यः ॥२॥

मानिसले प्रशंसा गरेको हुँदा नराशंस नाम राखिएका अग्निदेवले यो यज्ञ राम्ररी सम्पन्न गराऊन्। ती अग्निदेव अडिग, ज्ञानसम्पन्न र मधुर रश्मियुक्त छन्।

ईडितो अग्न आ वहेन्द्रं चित्रमिह प्रियम्। सुखै रथेभिरूतये ॥३॥

हे अग्निदेव ! तिमी सबैबाट स्तुति गर्न योग्य छौ। हाम्रो रक्षा गर्नका लागि प्रिय र विलक्षण शक्तिले सम्पन्न इन्द्रदेवलाई यहाँ सुखदायी रथबाट लिएर आऊ।

ऊर्णम्रदा वि प्रथस्वाभ्य१र्का अनूषत। भवा नः शुभ्र सातये ॥४॥

हे मानिस हो ! ऊनीजस्तै नरम र सुखदायी आसन ओछ्याओ। स्तोताहरू स्तुति गर्न थालिसके। हे शुभ्र अग्निदेव ! स्तुतिले वृद्धि भएर हामीलाई ऐश्वर्य प्रदान गर।

देवीर्द्वारो वि श्रयध्वं सुप्रायणा न ऊतये। प्रप्र यज्ञं पृणीतन ॥५॥

हे हविहरू हो ! तिमीहरू उत्तम गुण भएका, दिव्य द्वार खोल्दछौ र असल कर्म गर्छौ। हाम्रो रक्षाका निमित्त यज्ञलाई परिपूर्ण गर।

सुप्रतीके वयोवृधा यह्वी ऋतस्य मातरा। दोषामुषासमीमहे ॥६॥

सुन्दर रूप भएका, आयु बढाउने, महान् कर्म सम्पन्न गराउने, यज्ञकर्म निर्माण गर्ने रात्रि र उषादेवीलाई हामी उत्तम प्रकारले स्तुति गर्दछौं।

**वातस्य पत्मन्नीडिता दैव्या होतारा मनुषः। इमं नो यज्ञमा गतम् ॥७॥**
हे अग्नि र आदित्यरूपी दिव्य होताहरू हो ! तिमीहरू दुवै स्तुतिबाट प्रेरित भएर हामी मानिसका यस यज्ञमा वायुका गतिले आओ।

**इडा सरस्वती मही तिस्रो देवीर्मयोभुवः। बर्हिः सीदन्त्वस्रिधः ॥८॥**
इडा, सरस्वती र मही यी तीन देवीहरू सुखदायक छन्। यिनीहरू निर्बाध मार्गबाट हाम्रा यज्ञमा आइदिऊन्।

**शिवस्त्वष्टरिहा गहि विभुः पोष उत त्मना। यज्ञेयज्ञे न उदव ॥९॥**
हे त्वष्टादेव ! तिमी व्यापक सामर्थ्यसम्पन्न र कल्याणकारी कर्म गर्छौ। हाम्रा यज्ञमा आऊ र प्रत्येक यज्ञका उत्तम पदमा प्रतिष्ठित भएर हाम्रो रक्षा गर।

**यत्र वेत्थ वनस्पते देवानां गुह्या नामानि। तत्र हव्यानि गामय ॥१०॥**
हे वनस्पतिदेव ! तिमीले जानेका देवताका गुप्त स्थानमा हव्य साधन पुऱ्याइदेऊ।

**स्वाहाग्नये वरुणाय स्वाहेन्द्राय मरुद्भ्यः। स्वाहा देवेभ्यो हविः ॥११॥**
अग्नि र वरुणदेवका लागि हवि समर्पित गरिएको छ। यही हवि इन्द्रदेव र मरुत्गणका लागि पनि समर्पित गरिएको हो।

### [सूक्त - ६]

**ऋषि** - वसुश्रुत आत्रेय। **देवता** - अग्नि। **छन्द** - पङ्क्ति।

**अग्निं तं मन्ये यो वसुरस्तं यं यन्ति धेनवः।**
**अस्तमर्वन्त आशवोऽस्तं नित्यासो वाजिन इषं स्तोतृभ्य आ भर ॥१॥**
सबैका आश्रयस्वरूप अग्निदेवसित हामी परिचित छौं। अग्निदेव प्रदीप्त भएको देखेपछि साँझपख गाई आआफ्ना थलामा फर्कन्छन् र तीव्रगामी अश्व नित्य प्रदीप्त अग्नि देखेर तवेलामा फर्कन्छन्। हे अग्निदेव तिमी यस्तै भएर याजकहरूलाई मनग्गे धनधान्य प्रदान गर।

**सो अग्निर्यो वसुर्गृणे सं यमायन्ति धेनवः।**
**समर्वन्तो रघुद्रुवः सं सुजातासः सूरय इषं स्तोतृभ्य आ भर ॥२॥**
जो सबैका आश्रयरूप र सहायक हुन्, उनै अग्निदेवलाई हामी प्रार्थना गर्दछौं। अग्निका नजिकै गाई र तेज गतिमा कुद्ने अश्व पनि आउँछन्। श्रेष्ठ कुलमा उत्पन्न र सुसंस्कार सम्पन्न विद्वान्हरूले अग्निदेवलाई उपासना गर्दछन्। उपास्य गुणले युक्त हे अग्निदेव ! याजकहरूका लागि मनग्गे धनधान्य प्रदान गर।

**अग्निर्हि वाजिनं विशे ददाति विश्वचर्षणिः।**
**अग्नी राये स्वाभुवं स प्रीतो याति वार्यमिषं स्तोतृभ्य आ भर ॥३॥**
अग्निदेव निश्चय नै यजमानलाई अन्न दिने, पूज्य र सबैमाथि दृष्टि पुऱ्याउने खालका छन्। उनी प्रसन्न भएर यज्ञमा सबैलाई ऐश्वर्य प्रदान गर्नमा अलिकति पनि सङ्कोच गर्दैनन्। हे अग्निदेव ! तिमी स्तोताहरूलाई पर्याप्त पोषण देऊ।

**आ ते अग्न इधीमहि द्युमन्तं देवाजरम्।**
**यद्ध स्या ते पनीयसी समिद्दीदयति द्यवीषं स्तोतृभ्य आ भर ॥४॥**
हे अग्निदेव ! प्रकाशयुक्त र बुढ्यौलीले नछोएका तिमीलाई हामी प्रज्वलित गर्दछौं। तिम्रो श्रेष्ठ ज्योति द्युलोकमा प्रकाशित हुन्छ। तिमी स्तोतालाई अन्नले परिपूर्ण गर।

**आ ते अग्न ऋचा हविः शुक्रस्य शोचिषस्पते।**
**सुश्चन्द्र दस्म विश्पते हव्यवाट् तुभ्यं हूयत इषं स्तोतृभ्य आ भर ॥५॥**
विश्वलाई पोषण गर्ने, शत्रुको विनाश गर्ने, देवताहरूलाई हवि पुऱ्याइदिने, आनन्दवर्द्धक, स्वयं प्रकाशित हे अग्निदेव ! ऋचा उच्चारण गर्दै याजकहरू तिम्रा ज्वालामा आहुति दिँदै छन्। ती स्तोतालाई तिमी ऐश्वर्य प्रदान गर।

**प्रो त्ये अग्नयोऽग्निषु विश्वं पुष्यन्ति वार्यम्।**
**ते हिन्विरे त इन्विरे त इषण्यन्त्यानुषगिषं स्तोतृभ्य आ भर ॥६॥**
अग्निदेव अन्य सबै अग्निका तुलनामा बढी वरण गर्न योग्य हुनाले सबै धनलाई पुष्ट गराउँछन्। आनन्द प्रदायक अग्निदेव सबैलाई सन्मार्गमा प्रेरित गर्दै हविष्यान्नको कामना गर्दछन्। हे अग्निदेव ! तिमी स्तोतालाई खोजेजस्तै अन्नले समृद्ध गराऊ।

तव त्ये अग्ने अर्चयो महि व्राधन्त वाजिनः।
ये पत्वभिः शफानां व्रजा भुरन्त गोनामिषं स्तोतृभ्य आ भर ॥७॥

हे अग्निदेव ! तिम्रो किरण आहुति पाएर हुर्कन्छ। तिम्रो तेजस्वी किरण शव्दवान् भएर हविको कामना गर्दछ। हे अग्निदेव ! स्तोतालाई अन्न आदिले पूर्ण गराऊ।

नवा नो अग्न आ भर स्तोतृभ्यः सुक्षितीरिषः।
ते स्याम य आनृचुस्त्वादूतासो दमेदम इषं स्तोतृभ्य आ भर ॥८॥

हे अग्निदेव ! हामी स्तोतालाई नयाँ अन्नयुक्त उत्तम आवास प्रदान गर। हामी प्रत्येक घरमा पूजा गरौं र तिमीलाई दूतका रूपमा पाएर सुखी होऔं। हे अग्निदेव ! स्तोताले खोजेंजस्तै अन्न दिएर समृद्ध गराऊ।

उभे सुश्चन्द्र सर्पिषो दर्वी श्रीणीष आसनि।
उतो न उत्पुपूर्या उक्थेषु शवसस्पत इषं स्तोतृभ्य आ भर ॥९॥

प्रजाको पालन गर्ने, शक्तिले सम्पन्न, देदीप्यमान हे अग्निदेव ! आहुति प्रदान गर्दाखेरि दुवै पात्र तिम्रा मुखसम्म पुग्दछन्। हविष्यान्नद्वारा तिमीलाई प्रसन्न गर्ने स्तोतालाई महान् ऐश्वर्य प्रदान गर।

एवाँ अग्निमजुर्यमुर्गीर्भिर्यज्ञेभिरानुषक्।
दधदस्मे सुवीर्यमुत त्यदाश्वश्व्यमिषं स्तोतृभ्य आ भर ॥१०॥

यज्ञमा हामी उत्तम वाणीले अग्निदेवको पूजा गर्दछौं। अग्निदेवले हामीलाई उत्तम, वीर पुत्रपौत्रादि र बलशाली अश्व प्रदान गरुन्। स्तोताले खोजेको कुरो पाऊन्।

[सूक्त – ७]

ऋषि – इष आत्रेय। देवता – अग्नि। छन्द – अनुष्टुप् पङ्क्ति।

सखायः सं वः सम्यञ्चमिषं स्तोमं चाग्नये।
वर्षिष्ठाय क्षितीनामूर्जो नप्त्रे सहस्वते ॥१॥

हे ऋत्विक् मित्रहरू हो ! वरिष्ठ अग्निदेव जलका नाति हुन् र असल बल प्रदान गर्दछन्। तिमीहरू यिनका लागि असल स्तवन गाउँदै हविष्यान्न समर्पित गर।

कुत्रा चिद्यस्य समृतौ रण्वा नरो नृषदने।
अर्हन्तश्चिद्यमिन्धते सञ्जनयन्ति जन्तवः ॥२॥

जो प्रकट हुँदा मानिस खुसी हुन्छन्, ऋत्विक्हरू जसलाई स्तुति गर्दै यज्ञमा प्रज्वलित गर्दछन्, प्राणीहरू जसको दर्शन गर्न प्रकट हुन्छन्, ती अग्निदेव कहाँ छन् ?

सं यदिषो वनामहे सं हव्या मानुषाणाम्।
उत द्युम्नस्य शवस ऋतस्य रश्मिमा ददे ॥३॥

अन्न प्राप्तिको आशा गर्दै मानिसहरूले अग्निदेवलाई हवि दिन्छन्। त्यस बेला अग्निदेव आफ्ना सामर्थ्यले देदीप्यमान भएर सत्यको रूपमा रश्मि धारण गर्दछन्।

स स्मा कृणोति केतुमा नक्तं चिद्दूर आसते।
पावको यद्वनस्पतीन्प्र स्मा मिनात्यजरः ॥४॥

नबुढिने र पवित्र गराउने अग्निदेवले वनस्पति जलाउन लाग्दा रातको गहिरो अन्धकार पर भगाएर आफ्ना ज्वाला फिँजाउँछन्।

अव स्म यस्य वेषणे स्वेदं पथिषु जुह्वति।
अभीमह स्वजेन्यं भूमा पृष्ठेव रुरुहुः ॥५॥

यज्ञमार्गका पथिक ऋत्विक्हरू अग्निको सेवा गर्दै घिउका आहुति दिन्छन्। त्यस बेला पुत्र आफ्ना पिताका पिठ्युँमा चढेझैं घिउका धारामा ज्वालो आरूढ हुन्छ।

यं मर्त्यः पुरुस्पृहं विदद्विश्वस्य धायसे।
प्र स्वादनं पितूनामस्ततातिं चिदायवे ॥६॥

अग्निदेव अनेकौंबाट खोजिने, सबैलाई धारण गर्ने, अन्नको स्वाद लिने र यजमानलाई आश्रय दिने गर्दछन्। यजमानले उनको गुण जानेका छन्।

स हि ष्मा धन्वाक्षितं दाता न दात्या पशुः।
हिरिश्मश्रुः शुचिदन्नृभुरनिभृष्टतविषिः ॥७॥

झारपात टिपेर खाने पशुले जस्तै अग्निदेव निर्जन वनमा बसेर सुकेका काठ एकएक गर्दै भस्मीभूत पार्दछन्। सुनौला जुँगा र सेता दाँत भएका अग्निदेव ज्यादै विस्तृत र अपराजित सामर्थ्य भएका छन्।

शुचिः ष्म यस्मा अत्रिवत्प्र स्वधितीव रीयते।
सुषूरसूत माता क्राणा यदानशे भगम् ॥८॥

अत्रि ऋषिले जस्तै ऋत्विक्हरू जुन अग्निदेवको सुसार गर्दछन्, जो बन्चरोजस्तै भएर काठ विनाश गर्दछन्, जो हविष्यान्नको उपभोग गर्दछन्, उनै दीप्तिमान् अग्निदेवलाई अरणीले स्वेच्छापूर्वक उत्पन्न गर्दछ।

आ यस्ते सर्पिरासुतेऽग्ने शमस्ति धायसे।
ऐषु द्युम्नमुत श्रव आ चित्तं मर्त्येषु धाः ॥९॥

हे अग्निदेव ! तिमी हव्य पदार्थ भक्षण गर्दछौ। तिमी सम्पूर्ण जगत्लाई धारण गर्छौ। हाम्रो स्तुति तिमीलाई सुख दिने होस्। मरणशील स्तोतालाई तिमी तेजस्वी अन्न र उत्तम मन प्रदान गर।

इति चिन्मन्युमध्रिजस्त्वादातमा पशुं ददे।
आदग्ने अपृणतोऽत्रिः सासह्याद्दस्यूनिषः सासह्यान्नॄन् ॥१०॥

हे अग्निदेव ! रिस नियन्त्रण गरेका ऋषि तिमीबाट प्रदान गरिएका पशु प्राप्त गर्दछन्। तिमी हवि प्रदान नगर्ने कृपणलाई अत्रि ऋषिका अधीनमा गराऊ र अन्न चोर्ने दस्युलाई नियन्त्रण गर।

[सूक्त - ८]

ऋषि – इष आत्रेय। देवता – अग्नि। छन्द – जगती।

त्वामग्न ऋतायवः समीधिरे प्रत्नं प्रत्नास ऊतये सहस्कृत।
पुरुश्चन्द्रं यजतं विश्वधायसं दमूनसं गृहपतिं वरेण्यम् ॥१॥

हे बलले उत्पन्न अग्निदेव ! यज्ञ गर्ने पुराना ऋषिहरू आफ्नो संरक्षणका लागि तिमीलाई उचित किसिमले प्रज्वलित गर्दछन्। तिमी चिरपुरातन, आनन्ददायक, जगत्लाई धारण गर्ने, पूज्य र श्रेष्ठ गृहपालक हौ।

त्वामग्ने अतिथिं पूर्व्यं विशः शोचिष्केशं गृहपतिं नि षेदिरे।
बृहत्केतुं पुरुरूपं धनस्पृतं सुशर्माणं स्ववसं जरद्विषम् ॥२॥

हे अग्निदेव ! यजमानले तिमीलाई यज्ञवेदीमा स्थापित गरेका छन्। तिमी अतिथिजस्तै पूजनीय र गृहस्वामी हौ। तिमी दीप्तिमान् ध्वजाजस्ता उच्च ज्वाला भएका, अनेकौं रूप भएका, धन प्रदान गर्ने, अत्यन्त सुखकारी, समिधा जलाउने र हामीलाई सबै किसिमले उत्तम संरक्षण दिने हौ।

त्वामग्ने मानुषीरीळते विशो होत्राविदं विविचिं रत्नधातमम्।
गुहा सन्तं सुभग विश्वदर्शतं तुविष्वणसं सुयजं घृतश्रियम् ॥३॥

हे उत्तम धनका स्वामी अग्निदेव ! मानिसहरू तिम्रो स्तुति गर्दछन्। तिमी यज्ञको कर्म जान्ने, सत्यको विवेचना गर्ने, रत्न दान गर्नेहरूमा श्रेष्ठ, गोप्य रूपमा रहने, सबैका लागि दर्शनीय, अति शब्दवान्, उत्तम रूपले पूजनीय र घिउका सिञ्चनले अति शोभायमान् हुने हौ।

त्वामग्ने धर्णसिं विश्वधा वयं गीर्भिर्गृणन्तो नमसोप सेदिम।
स नो जुषस्व समिधानो अङ्गिरो देवो मर्तस्य यशसा सुदीतिभिः ॥४॥

हे अग्निदेव ! तिमी सबैलाई धारण गर्दछौ। हामी मनग्गे स्तोत्रले स्तुति गर्दै, नमस्कारले अभिवादन गर्दै तिम्रा अगाडि आउँछौं। हे अङ्गिराहरूमा श्रेष्ठ देवता ! तिमी राम्रोसित प्रदीप्त भएर उत्तम दीप्तिमान् ज्वालाले हाम्रो हवि ग्रहण गर। हामी मानिसलाई कीर्ति प्रदान गर।

त्वमग्ने पुरुरूपो विशेविशे वयो दधासि प्रत्नथा पुरुष्टुत।
पुरूण्यन्ना सहसा वि राजसि त्विषिः सा ते तित्विषाणस्य नाधृषे ॥५॥

हे अग्निदेव ! विविध रूप भएका तिमी यजमानलाई पहिलेकै जस्तो अन्नले परिपूर्ण गर्दछौ। तिमी बारम्बार सबै कर्ममा पूजित हुन्छौ। तिमी आफ्ना सामर्थ्यले विविध अन्नका स्वामी हौ। तिम्रो तेजस्वी दीप्ति कसैले पनि दबाउन सक्दैन।

त्वामग्ने समिधानं यविष्ठ्य देवा दूतं चक्रिरे हव्यवाहनम्।
उरुज्रयसं घृतयोनिमाहुतं त्वेषं चक्षुर्दधिरे चोदयन्मति ॥६॥

हे युवा अग्निदेव ! तिमी उत्तम प्रकारले प्रज्वलित हुन्छौ। देवताहरूले तिमीलाई हवि वहन गर्ने दूतका रूपमा प्रतिष्ठित गरेका छन्। घिउका बलले प्रदीप्त भएर हवि ग्रहण गर्ने हे अग्निदेव ! अत्यन्त वेगवान् र तेजस्वी रूप भएका तिमीलाई मानिसले बुद्धिका प्रेरक र आँखाको रूप मानेर आदर गर्छन्।

त्वामग्ने प्रदिव आहुतं घृतैः सुम्नायवः सुषमिधा समीधिरे।
स वावृधान ओषधीभिरुक्षितोऽभि ज्रयांसि पार्थिवा वि तिष्ठसे ॥७॥

हे अग्निदेव ! सुखको खोजी गर्ने उहिलेका यजमान तिमीलाई उत्तम समिधा, आहुति र घिउले प्रदीप्त गराउँथे। औषधि आदिले सिञ्चित भएर बढ्दै जाँदा तिमी पृथ्वीको सतहका अन्नमा व्याप्त भएर अवस्थित छौ।

[सूक्त - ९]

ऋषि – गय आत्रेय। देवता – अग्नि। छन्द – अनुष्टुप् पङ्क्ति।

त्वामग्ने हविष्मन्तो देवं मर्तास ईडते।
मन्ये त्वा जातवेदसं स हव्या वक्ष्यानुषक् ॥१॥

हे तेजस्वी अग्निदेव ! हामी मानिसहरू हवि आदि पदार्थ लिएर तिमीलाई उत्तम स्तुति गर्दछौं। तिमी सम्पूर्ण उत्पन्न जीवहरूलाई जान्दछौ। हाम्रो हवि देवताहरूसम्म तिमी पुऱ्याउने गर्दछौ।

अग्निर्होता दास्वतः क्षयस्य वृक्तबर्हिषः।
सं यज्ञासश्चरन्ति यं सं वाजासः श्रवस्यवः ॥२॥

सबै यज्ञहरूले जुन अग्निदेवको अनुसरण गर्दछन्, अन्न र यश चाहने याजमानको हव्य जसलाई प्राप्त हुन्छ, उनै अग्निदेव हविदाता र कुश उखेल्ने यजमानका घरमा होताका रूपमा प्रतिष्ठित हुन्छन्।

उत स्म यं शिशुं यथा नवं जनिष्टारणी।
धर्तारं मानुषीणां विशामग्निं स्वध्वरम् ॥३॥

मानिसहरूलाई पोषण प्रदान गर्ने अग्निदेव उत्तम रीतिले यज्ञसम्पन्न गराउँछन्। दुई वटा अरणीले यी अग्निदेवलाई नयाँ शिशुझैं उत्पन्न गर्दछन्।

उत स्म दुर्गृभीयसे पुत्रो न ह्वार्याणाम्।
पुरू यो दग्धासि वनाग्ने पशुर्न यवसे ॥४॥

हे अग्निदेव ! कुटिल गति भएको सर्प या अश्वजस्तै छौ। तिमी अति कठिनतापूर्वक धारण गरिने बालक छौ। जौका खेतमा प्रवेश गरेका पशुले जौ खाएजस्तै गरी वनमा पसेपछि तिमी वनलाई नै भस्म गराउँछौ।

अध स्म यस्यार्चयः सम्यक्संयन्ति धूमिनः।
यदीमह त्रितो दिव्युप ध्मातेव धमति शिशीते ध्मातरी यथा ॥५॥

धुवाँ मिसिएका अग्निका शिखाहरू सर्वत्र व्याप्त हुन्छन्। फलामको काम गर्नेहरू हतियार बनाउन अग्निलाई प्रवृद्ध गर्दछन्। यसरी संवर्द्धित अग्नि तीनै लोकमा व्याप्त हुन्छन्। कर्मकारहरू जसरी खलाँतीले अग्निलाई प्रज्वलित गर्दछन्, अग्निदेव उसरी नै स्वयं तेजस्वी बन्दछन्।

तवाहमग्न ऊतिभिर्मित्रस्य च प्रशस्तिभिः।
द्वेषोयुतो न दुरिता तुर्याम मर्त्यानाम् ॥६॥

हे अग्निदेव ! हामी मित्रभावले युक्त भएर प्रशंसात्मक स्तोत्रले तिम्रो स्तुति गर्दछौं। तिमी आफ्ना रक्षण सामर्थ्यले संरक्षित गरेर हामीलाई पाप कर्मबाट पार लगाऊ र द्वेष गर्ने बाहिरी शत्रुबाट पनि हामीलाई जोगाऊ।

तं नो अग्ने अभी नरो रयिं सहस्व आ भर।
स क्षेपयत्स पोषयद्भुवद्वाजस्य सातय उतैधि पृत्सु नो वृधे ॥७॥

हे बलवान् अग्निदेव ! हामी मानिसहरूलाई तिमी उत्तम ऐश्वर्यले सम्पन्न बनाऊ। हाम्रा शत्रु विनाश गरेर तिमी सबै किसिमका पोषण प्रदान गर। अन्न प्राप्ति हाम्रा लागि सुगम होस्। हे अग्निदेव ! युद्धमा हामीलाई अग्रणी बनाउने प्रयास गर।

[सूक्त - १०]

ऋषि - गय आत्रेय। देवता - अग्नि। छन्द - अनुष्टुप् पङ्क्ति।

अग्न ओजिष्ठमा भर द्युम्नमस्मभ्यमध्रिगो।
प्र नो राया परीणासा रत्सि वाजाय पन्थाम् ॥१॥

हे निर्बाध गति भएका अग्निदेव ! ओजस्विता प्रदान गर्ने सम्पदा हामीलाई प्रदान गर। हे देव ! हामीलाई प्रशंसनीय धन र शक्ति प्राप्त हुने मार्ग देखाऊ।

त्वं नो अग्ने अद्भुत क्रत्वा दक्षस्य मंहना।
त्वे असुर्य१ मारुहत्क्राणा मित्रो न यज्ञियः ॥२॥

हे अग्निदेव ! तिमी अत्यन्त विलक्षण कर्म सम्पादन गर्दछौ। उत्तम यज्ञ आदि कर्मले प्रसन्न भएर हामीलाई असल बल प्रदान गर। तिमी असुरहरूलाई पराजित गर्नमा समर्थ छौ। तिमी सूर्यजस्तै चारैतिर व्याप्त होऊ।

त्वं नो अग्न एषां गयं पुष्टिं च वर्धय।
ये स्तोमेभिः प्र सूरयो नरो मघान्यानशुः ॥३॥

हे अग्निदेव ! उत्तम स्तोत्रले तिम्रो स्तुति गर्ने मानिसलाई तिमी असल धन आदि प्राप्त गराउँछौ। तिम्रो स्तुति गरेर हामी पनि उत्तम धन आदि कमाउँदै समृद्ध हुन सकौँ।

ये अग्ने चन्द्र ते गिरः शुम्भन्त्यश्वराधसः।
शुष्मेभिः शुष्मिणो नरो दिवश्चिद्येषां बृहत्सुकीर्तिर्बोधति त्मना ॥४॥

हे आह्लाद प्रदायक अग्निदेव ! उत्तम वाणीले तिम्रो स्तुति गर्ने मानिसले अश्वयुक्त ऐश्वर्य प्राप्त गर्दछन्, उत्तम बलले सबलवान् हुन्छन्। तिनीहरूको उत्तम कीर्ति स्वर्गभन्दा पनि अधिक विस्तृत हुन्छ र त्यस्ता मानिसलाई तिमी निश्चय नै चिन्दछौ।

तव त्ये अग्ने अर्चयो भ्राजन्तो यन्ति धृष्णुया।
परिज्मानो न विद्युतः स्वानो रथो न वाजयुः ॥५॥

हे अग्निदेव ! तिम्रो अत्यन्त चञ्चल र दीप्तिसम्पन्न रश्मि सर्वत्र व्याप्त हुन्छ। विद्युत्को जस्तै शब्द गर्दछ। त्यो रश्मि अन्नको खोजीमा हिंडेको मानिस र वेगवान् रथझैं सर्वत्र विचरण गर्दछन्।

नू नो अग्न ऊतये सबाधसश्च रातये।
अस्माकासश्च सूरयो विश्वा आशास्तरीषणि ॥६॥

हे अग्निदेव ! तिमी चाँडै हाम्रो रक्षा गर। हामीलाई धन ऐश्वर्यले युक्त गरेर हाम्रा आपद् हटाऊ। हाम्रा छोराछोरी र दाजुभाइ तिम्रो स्तुति गर्दै सबै रहर पूरा गर्न सक्ने होऊन्।

त्वं नो अग्ने अङ्गिरः स्तुतः स्तवान आ भर।
होतर्विभ्वासहं रयिं स्तोतृभ्यः स्तवसे च न उतैधि पृत्सु नो वृधे ॥७॥

हे अङ्गिराहरूमा श्रेष्ठ अग्निदेव ! उहिलेका ऋषिहरूले तिम्रो स्तुति गरे, तिमी उपास्य हौ। वैभवशाली शत्रुको ऐश्वर्य हामीलाई तिमी प्रदान गर। हामी यज्ञको काम गर्दा तिमीलाई होताका रूपमा स्तुति गर्दछौँ। हाम्रो स्तुतिलाई बलियो बनाइदेऊ। युद्धमा पनि आफ्ना बलले हामीलाई अघि बढाऊ।

[सूक्त - ११]

ऋषि - सुतम्भर आत्रेय। देवता - अग्नि। छन्द - जगती।

जनस्य गोपा अजनिष्ट जागृविरग्निः सुदक्षः सुविताय नव्यसे।
घृतप्रतीको बृहता दिविस्पृशा द्युमद्वि भाति भरतेभ्यः शुचिः ॥१॥

प्रजाको रक्षा गर्ने, जागृति र दक्षता प्रदान गर्ने अग्निदेव याजकलाई प्रगतिको नयाँ बाटो प्रशस्त गर्नका लागि प्रकट भएका छन्। घिउका आहुतिले अधिक प्रदीप्त भएर बिराट् आकाश स्पर्श गर्न सक्छन्। साधकलाई तेजले युक्त पवित्रता प्रदान गर्नका लागि नै तिमी प्रकट हुन्छौ।

यज्ञस्य केतुं प्रथमं पुरोहितमग्निं नरस्त्रिषधस्थे समीधिरे।
इन्द्रेण देवैः सरथं स बर्हिषि सीदन्नि होता यजथाय सुक्रतुः ॥२॥

अग्निदेव यज्ञको ध्वजावाहक, देवताहरूका रथमा सँगै बस्ने र पुरोहितजस्ता छन्। याजकहरू तीन ठाउँमा राम्ररी अग्नि प्रज्वलित गर्दछन्। सत्कर्ममा लागेर यज्ञ रुचाउने अग्निदेव आफ्ना स्थानमा यज्ञका लागि रहन्छन्।

असंमृष्टो जायसे मात्रोः शुचिर्मन्द्रः कविरुदतिष्ठो विवस्वतः।
घृतेन त्वावर्धयन्नग्न आहुत धूमस्ते केतुरभवद्दिवि श्रितः ॥३॥

हे अग्निदेव ! तिमी मातृरूपा दुई अरणीबाट निर्विघ्न रूपले जन्मन्छौ। तिमी मेधावी, पवित्र गराउने र स्तुत्य छौ। यजमानहरू तिमीलाई आफ्ना हितको आशाले प्रदीप्त गर्दछन्। उहिलेका ऋषिले तिमीलाई घिउले प्रवृद्ध गराएका थिए। आहुतिले ठूलो रूप लिने हुँदा तिम्रो धुवाँ ध्वजाको रूपमा आकाशसम्म फिँजिन्छ।

अग्निर्नो यज्ञमुप वेतु साधुयाग्निं नरो वि भरन्ते गृहेगृहे।
अग्निर्दूतो अभवद्धव्यवाहनोऽग्निं वृणाना वृणते कविक्रतुम् ॥४॥

सबै खालका असल कर्म सिद्ध गर्ने अग्निदेव हाम्रा यज्ञमा आएर बसून्। सबै मानिसले घरघरमा अग्निको स्थापना गर्दछन्। हव्यवाहक अग्निदेव देवताहरूका दूतका रूपमा प्रतिष्ठित छन्। स्तोताहरू ज्ञानसम्पन्न यज्ञकर्ममा अग्निदेवलाई राम्रो स्तुति गर्दछन्।

तुभ्येदमग्ने मधुमत्तमं वचस्तुभ्यं मनीषा इयमस्तु शं हृदे।
त्वां गिरः सिन्धुमिवावनीर्महीरा पृणन्ति शवसा वर्धयन्ति च ॥५॥

हे अग्निदेव ! हाम्रो अत्यन्त मिठो वचन तिम्रै लागि समर्पित छ। यो स्तोत्र तिम्रा मनमा सुख लाग्ने होस्। नदीहरूले समुद्र भरेर समुद्रको बल बढेझैँ हाम्रा स्तुतिले तिम्रो बल बढाउँछ।

त्वामग्ने अङ्गिरसो गुहा हितमन्वविन्दञ्छिश्रियाणं वनेवने।
स जायसे मध्यमानः सहो महत्त्वामाहुः सहसस्पुत्रमङ्गिरः ॥६॥

हे अग्निदेव ! विभिन्न वनस्पतिमा व्याप्त भएर गोप्य ठाउँमा रहेका बेला तिमीलाई अङ्गिरावंशी ऋषिहरूले फेला पारे। धेरै बल गरेर अरणी घोटेपछि तिमी उत्पन्न हुन्छौ। त्यसो हुनाले मनीषीहरू तिमीलाई शक्तिका पुत्र भनेर बोलाउँछन्।

[सूक्त - १२]

ऋषि - सुतम्भर आत्रेय। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

प्राग्नये बृहते यज्ञियाय ऋतस्य वृष्णे असुराय मन्म।
घृतं न यज्ञ आस्ये३ सुपूतं गिरं भरे वृषभाय प्रतीचीम् ॥१॥

अग्निदेव आफ्ना सामर्थ्यले अतिशय महान्, यज्ञका लागि योग्य, जल बर्साउने, प्राणका आधार र अभीष्ट कुरो पुऱ्याइदिने हुन्छन्। यज्ञका मुखमा सिञ्चित घिउको धारोजस्तो हाम्रो स्तुति अग्निदेवका लागि सुखदायक होस्।

ऋतं चिकित्व ऋतमिच्चिकिद्ध्यृतस्य धारा अनु तृन्धि पूर्वीः।
नाहं यातुं सहसा न द्वयेन ऋतं सपाम्यरुषस्य वृष्णः ॥२॥

हे अग्निदेव ! हामीले गरेको स्तुति तिमी चिन्दछौ, समर्थन गर। धेरै पानी बर्साउनका लागि तिमी हाम्रो अनुकूल होऊ। हामी बलिया भएर यज्ञमा बाधा उत्पन्न गर्दैनौँ। न त वैदिक कार्यको विधान नै मास्छौँ। तिमी अत्यन्त दीप्तिमान् र रहर पूरा गराउने हुनाले हामी तिम्रो स्तुति गर्दछौँ।

कया नो अग्न ऋतयन्नृतेन भुवो नवेदा उचथस्य नव्यः।
वेदा मे देव ऋतुपा ऋतूनां नाहं पतिं सनितुरस्य रायः ॥३॥

हे अग्निदेव ! तिमी जल बर्साउँछौ। तिमी हाम्रा कुन ठूला यज्ञकर्ममा हाम्रो नयाँ स्तोत्र चिन्दछौ ? ऋतुको संरक्षण गर्ने अग्निदेवले हामीलाई चिनून्। सधैं यजन गर्ने हामी धनका अधीश्वर भनेर अग्निदेवलाई जान्दैनौँ र ?

के ते अग्ने रिपवे बन्धनासः के पायवः सनिषन्त द्युमन्तः।
के धासिमग्ने अनृतस्य पान्ति क आसतो वचसः सन्ति गोपाः ॥४॥

हे अग्निदेव ! शत्रु बाँध्ने को हो ? दुनियाँ पाल्ने को हो ? को अत्यन्त दीप्तिमान् र दानशील छ ? असत्यको बाटो हिँड्नेलाई कसले जोगाउँछ ? असत्य वचन बोल्नेलाई कसले रक्षा गर्दछ ?

सखायस्ते विषुणा अग्न एते शिवासः सन्तो अशिवा अभूवन्।
अधूर्षत स्वयमेते वचोभिर्ऋजूयते वृजिनानि ब्रुवन्तः ॥५॥

हे सर्वत्र व्यापक अग्निदेव ! तिम्रो उपासना नगर्नाले यी मित्रहरूले दुःख पाएका थिए। तिम्रो उपासना गरेपछि यिनले सुख पाए। तिमीप्रति हामी सोझो व्यवहार गर्दछौँ। जसले हामीसित छलकपट र ढाँट कुरा गर्दछन्, ती शत्रुले आफ्नै अनिष्ट गर्छन् र आफैं नाश हुन्छन्।

यस्ते अग्ने नमसा यज्ञमीट्ट ऋतं स पात्यरुषस्य वृष्णः।
तस्य क्षयः पृथुरा साधुरेतु प्रसर्स्राणस्य नहुषस्य शेषः ॥६॥

हे अग्निदेव ! तिमी दीप्तिमान् र मनको रहर पूरा गराउने हौ। जुन यजमान हृदयदेखि नै नमस्कार गर्दै स्तोत्रले तिम्रो स्तुति गर्दछन् र यज्ञको नियम उचित रूपले पालन गर्दछन्, उनको घर सप्रियोस्। राम्रोसँग तिम्रो सेवा गर्ने यी यजमानका मनको इच्छा पूरा हुन्छ र पुत्र आदि प्राप्त गर्दछन्।

[सूक्त - १३]

ऋषि - सुतम्भर आत्रेय। देवता - अग्नि। छन्द - गायत्री।

अर्चन्तस्त्वा हवामहेऽर्चन्तः समिधीमहि। अग्ने अर्चन्त ऊतये ॥१॥

हे अग्निदेव ! हामी स्तोताहरू तिम्रो अर्चना गर्दछौं, तिमीलाई बोलाउँछौं र स्तुति गर्दै आफ्नो रक्षाका लागि तिमीलाई प्रज्वलित गराउँछौं।

अग्नेः स्तोमं मनामहे सिध्रमद्य दिविस्पृशः। देवस्य द्रविणस्यवः ॥२॥

धन लाभ गर्ने रहरले हामी आकाशव्यापी र तेजस्वी अग्निदेवलाई सिद्धि प्रदान गरुन् भनेर स्तोत्रले स्तुति गर्दछौं।

अग्निर्जुषत नो गिरो होता यो मानुषेष्वा। स यक्षद्दैव्यं जनम् ॥३॥

यज्ञका साधन र मानिसका सहायक अग्निदेवले हाम्रो स्तुति सुनून्। उनैले देवताकहाँ हाम्रो हव्य पुर्‍याऊन्।

त्वमग्ने सप्रथा असि जुष्टो होता वरेण्यः। त्वया यज्ञं वि तन्वते ॥४॥

हे अग्निदेव ! हर्षप्रदायक, वरण गर्न योग्य र यज्ञ सम्पन्न गराउने तिमी महान् छौ। सबै यजमानहरू तिमीलाई प्रतिष्ठित गरेर यज्ञको अनुष्ठान पूरा गर्दछन्।

त्वामग्ने वाजसातमं विप्रा वर्धन्ति सुष्टुतम्। स नो रास्व सुवीर्यम् ॥५॥

हे अग्निदेव ! तिमी अन्न प्रदान गर्न र उत्तम स्तोत्रले स्तुति गरिन योग्य छौ। मेधावी स्तोताहरू उचित किसिमका स्तुतिले तिमीलाई ठूलो पार्छन्। हे अग्निदेव ! हामीलाई उत्तम पराक्रमयुक्त तेजस्वी बल प्रदान गर।

अग्ने नेमिरराँ इव देवाँस्त्वं परिभूरसि। आ राधश्चित्रमृञ्जसे ॥६॥

हे अग्निदेव ! चक्रका केन्द्रबाट चारैतिर गज छरिएझैं तिमी देवताहरूका वरिपरि व्याप्त हुन्छौ। हामीलाई तिमी विभिन्न प्रकारले ऐश्वर्ययुक्त गराऊ।

[सूक्त - १४]

ऋषि - सुतम्भर आत्रेय। देवता - अग्नि। छन्द - गायत्री।

अग्निं स्तोमेन बोधय समिधानो अमर्त्यम्। हव्या देवेषु नो दधत् ॥१॥

हे मानिसहरू हो ! अविनाशी अग्निदेवलाई राम्रा स्तोत्रले धेरै प्रज्वलित गराओ। राम्ररी बलेर तिनले हाम्रो हव्य पदार्थ देवताहरूसम्म पुर्‍याऊन्।

तमध्वरेष्वीडते देवं मर्ता अमर्त्यम्। यजिष्ठं मानुषे जने ॥२॥

साधकहरू यज्ञमा दिव्य गुणले सम्पन्न, अमर र सबै मानिसका बीचमा परम पूजनीय उनै अग्निदेवलाई उत्तम स्तुति गर्दछन्।

तं हि शश्वन्त ईडते स्रुचा देवं घृतश्चुता। अग्निं हव्याय वोढवे ॥३॥

स्तोताहरू यज्ञमा स्रुवाले घिउका धारा बगाउँदै देवताका लागि हवि वहन गरुन् भनेर दिव्य गुण सम्पन्न अग्निदेवलाई स्तुति गर्दछन्।

अग्निर्जातो अरोचत घ्नन्दस्यूञ्ज्योतिषा तमः। अविन्ददगा अपः स्वः ॥४॥

अरणीमन्थनबाट उत्पन्न अग्निदेव आफ्नो तेजले अन्धकार र राक्षसहरूको विनाश गर्दै प्रकाशित हुन्छन्। यिनै अग्निदेवबाट किरण, जल र सूर्यदेव प्रकट हुन्छन्।

अग्निमीडेन्यं कविं घृतपृष्ठं सपर्यत। वेतु मे शृणवद्धवम् ॥५॥

हे मानिसहरू हो ! स्तुति गर्न योग्य र ज्ञानी अग्निदेवको पूजा गर। यिनी घिउका आहुतिले प्रदीप्त हुन्छन्। अग्निदेवले हाम्रो आह्वान सुनेर बुझून्।

अग्निं घृतेन वावृधुः स्तोमेभिर्विश्वचर्षणिम्। स्वाधीभिर्वचस्युभिः ॥६॥
ऋत्विक्हरू स्तोत्रसँगै घिउका आहुतिले स्तुतिको कामना गर्ने, ध्यानगम्य देवताहरूका लागि सर्वद्रष्टा अग्निदेवलाई प्रवृद्ध गर्दछन्।

[सूक्त - १५]

ऋषि - धरुण आङ्गिरस। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**प्र वेधसे कवये वेद्याय गिरं भरे यशसे पूर्व्याय।**
**घृतप्रसत्तो असुरः सुशेवो रायो धर्ता धरुणो वस्वो अग्निः ॥१॥**

हविरूपी घिउले प्रसन्न हुने अग्निदेव अत्यन्त बलशाली, अत्यन्त सुखकारी, धनका अधिपति, हव्यवाहक, गृहप्रदाता, विधाता, क्रान्तदर्शी, यशस्वी, श्रेष्ठ, जान्न योग्य र मेधावी छन्। यस्ता अग्निदेवका लागि हामी स्तुति रच्दछौं।

**ऋतेन ऋतं धरुणं धारयन्त यज्ञस्य शाके परमे व्योमन्।**
**दिवो धर्मन्धरुणे सेदुषो नॄञ्जातैरजाताँ अभि ये ननक्षुः ॥२॥**

स्वर्ग धारण गरेका, यज्ञमा बसेका, नेतृत्व गर्ने, देवताहरूलाई ऋत्विक्का सहयोगबाट जुन यजमानले निम्त्याएर प्रतिष्ठित गराउँछन्, तिनै यजमानले यज्ञका धारक, सत्यका स्वरूपमा रहेका अग्निदेवलाई स्तोत्रद्वारा प्रसन्न गर्दछन्।

**अंहोयुवस्तन्वस्तन्वते वि वयो महद्दुष्टरं पूर्व्याय।**
**स संवतो नवजातस्तुतुर्यात्सिंहं न क्रुद्धमभितः परि ष्ठुः ॥३॥**

जुन यजमान महान् अग्निदेवका निम्ति दुष्टहरूले पाउन नसक्ने हविष्यान्न अर्पित गर्दछन्, ती यजमानहरू निष्पाप शरीरले युक्त भएर उन्नति गर्दछन्। नवजात अग्निदेव रिसाएको सिंहजस्तो भएर हाम्रा सबै सङ्गठित शत्रुलाई विनाश गरुन् र वर्तमान शत्रुलाई हामीदेखि टाढा पुऱ्याइदिऊन्।

**मातेव यद्भरसे पप्रथानो जनञ्जनं धायसे चक्षसे च।**
**वयोवयो जरसे यद्दधानः परि त्मना विषुरूपो जिगासि ॥४॥**

सर्वत्र प्रख्यात यी अग्निदेव आमाले झैं सबै प्राणीलाई पालनपोषण गर्दछन्। यिनी प्रत्येकलाई धारण गर्ने र सबैलाई हेरविचार गर्ने हुनाले स्तुत्य छन्। प्रज्वलित भएर यिनले अन्न पचाइदिन्छन् र विभिन्न रूपमा यिनले आफ्नो शक्ति व्याप्त गराउँछन्।

**वाजो नु ते शवसस्पात्वन्तमुरुं दोघं धरुणं देव रायः।**
**पदं न तायुर्गुहा दधानो महो राय चितयन्नत्रिमस्पः ॥५॥**

धेरै खालका रहर पूरा गराउने, धनका अधिपति हे दिव्य अग्निदेव ! हविष्यान्नले तिम्रो बल उसै गरी रक्षा गरोस्, जसरी चोरले चोरी ल्याएको धन गुफामा लुकाएर त्यसको सुरक्षा गर्दछ। हे अग्निदेव ! हामीलाई मनग्गे धन प्राप्त गर्ने उत्तम उपाय सिकाइदेऊ, अत्रि मुनिलाई प्रसन्न गर।

[सूक्त - १६]

ऋषि - पूरु आत्रेय। देवता - अग्नि। छन्द - अनुष्टुप् पङ्क्ति।

**बृहद्वयो हि भानवेऽर्चा देवायाग्नये।**
**यं मित्रं न प्रशस्तिभिर्मर्तासो दधिरे पुरः ॥१॥**

मित्रजस्तै, तेजस्वी अग्निदेवलाई स्तुति गर्नका लागि याजकहरू अगाडि स्थापित गरेर प्रचुर मात्रामा हविष्यान्नको आहुति प्रदान गर्दछन्।

**स हि द्युभिर्जनानां होता दक्षस्य बाह्वोः।**
**वि हव्यमग्निरानुषग्भगो न वारमृण्वति ॥२॥**

जुन अग्निदेवले देवताहरूका लागि अनुकूल मार्गबाट हव्य आदि पदार्थ पुऱ्याउँछन्, जो बाहुबलका दीप्तिले प्रकाशित हुन्छन् ती अग्निदेव यजमानका लागि देवताहरूलाई आह्वान गर्दछन्। सूर्यदेवले जस्तै उनी सबैले रुचाउने धन प्रदान गर्दछन्।

**अस्य स्तोमे मघोनः सख्ये वृद्धशोचिषः।**
**विश्वा यस्मिन्तुविष्वणि समर्ये शुष्ममादधुः ॥३॥**

सबै ऋत्विक्हरू हव्य पदार्थ र धेरै किसिमका शब्दले युक्त उत्तम स्तोत्रले विशिष्ट अग्निदेवमा बलको स्थापना राम्ररी गर्दछन्। यसरी बढेका, तेजसम्पन्न र ऐश्वर्यवान् अग्निदेवसित हामी सबै मित्रभावमा रहेर स्तुति गर्दछौं।

**अधा ह्यग्न एषां सुवीर्यस्य मंहना। तमिद्यह्वं न रोदसी परि श्रवो बभूवतुः ॥४॥**

हे अग्निदेव ! हामीलाई रहर गरेको, असल, पराक्रमयुक्त बलले सम्पन्न गराऊ। महान् सूर्यदेवका आश्रयमा धर्ती र आकाश अवस्थित रहेझैं तिम्रा आश्रयबाट हामी सम्पूर्ण अन्न र धन प्राप्त गर्दछौं।

**नू न एहि वार्यमग्ने गृणान आ भर।**
**ये वयं ये च सूरयः स्वस्ति धामहे सचोतैधि पृत्सु नो वृधे ॥५॥**

हे अग्निदेव ! हामी यजमानहरू तिम्रो स्तुति गर्दछौं। तिमी चाँडै नै हाम्रा यज्ञमा अधिष्ठित होऊ र हाम्रा लागि स्वीकार योग्य धन धारण गर। हामी स्तोताहरू तिम्रो स्तुति गर्दछौं। तिमी युद्धमा हामीलाई रक्षण साधनले समृद्ध गराऊ।

[सूक्त - १७]

**ऋषि** - पुरु आत्रेय। **देवता** - अग्नि। **छन्द** - अनुष्टुप् पङ्क्ति।

**आ यज्ञैर्देव मर्त्य इत्था तव्यांसमूतये। अग्निं कृते स्वध्वरे पूरुरीडीतावसे ॥१॥**

हे अग्निदेव ! पुरु ऋषिले गरेका उत्तम यज्ञमा आफ्नो रक्षा गर्ने विचारले तिम्रो स्तुति गरेका थिए। मानिसहरू पनि आफ्ना यज्ञमा आफ्नो रक्षा गर्नका लागि उत्तम स्तुतिले तिमीलाई आह्वान गर्दछन्।

**अस्य हि स्वयशस्तर आसा विधर्मन्मन्यसे।**
**तं नाकं चित्रशोचिषं मन्द्रं परो मनीषया ॥२॥**

हे धर्मानुयायी स्तोताहरू हो ! तिमीहरू अत्यन्त श्रेष्ठ र यशस्वी कर्म गर्दछौ। जो स्तुत्य छ, जसको तेज अति विलक्षण छ र जो दुःखरहित छ, त्यस्ता अग्निदेवलाई आफ्ना असल बुद्धियुक्त वाणीले स्तुति गर।

**अस्य वासा उ अर्चिषा य आयुक्त तुजा गिरा।**
**दिवो न यस्य रेतसा बृहच्छोचन्त्यर्चयः ॥३॥**

अग्निदेव आफ्नो बल र स्तुतिले सामर्थ्यशाली भएका छन् र सूर्यदेवजस्तै दीप्तिमान् छन्। उनका विस्तृत ज्वाला र तेजले सम्पूर्ण जगत् प्रकाशमान् हुन्छ र तिनैका वर्चस्ले सूर्यदेव पनि प्रकाशयुक्त भएका छन्।

**अस्य क्रत्वा विचेतसो दस्मस्य वसु रथ आ।**
**अधा विश्वासु हव्योऽग्निर्विक्षु प्र शस्यते ॥४॥**

असल बुद्धिका ऋत्विक्हरू दर्शनीय अग्निदेवलाई यजन गरेर धनसहितको रथ प्राप्त गर्दछन्। हव्यवाहक अग्निदेवलाई सम्पूर्ण प्रजाले उचित प्रशंसा गर्दछन्।

**नू न इद्धि वार्यमासा सचन्त सूरयः।**
**ऊर्जो नपादभिष्टये पाहि शग्धि स्वस्तय उतैधि पृत्सु नो वृधे ॥५॥**

हे अग्निदेव ! स्तोताहरूले तिम्रो स्तुति गरेर प्राप्त गर्ने धन स्वीकार्य हुन्छ र हामीलाई चाँडै प्राप्त गराऊ। हे बलसंयुक्त अग्निदेव ! हामीलाई अभीष्ट अन्न दिएर रक्षा गर। हामीलाई कल्याणकारी पशुधन देऊ। सङ्ग्राममा हाम्रो विजयको प्रयास गर।

[सूक्त - १८]

**ऋषि** - मृक्तवाह द्वित आत्रेय। **देवता** - अग्नि। **छन्द** - अनुष्टुप् पङ्क्ति।

**प्रातरग्निः पुरुप्रियो विशः स्तवेतातिथिः।**
**विश्वानि यो अमर्त्यो हव्या मर्तेषु रण्यति ॥१॥**

अग्निदेव सबैका लागि प्रिय छन्। यिनी बिहानीको सवनमा प्रजाहरूका अतिथिझैं पूजनीय र स्तुत्य हुन्छन्। अविनाशी अग्निदेव यजमानसित सबै खालका हव्य पदार्थको कामना गर्दछन्।

**द्विताय मृक्तवाहसे स्वस्य दक्षस्य मंहना।**
**इन्दुं स धत्त आनुषक्स्तोता चित्ते अमर्त्य ॥२॥**

हे अग्निदेव ! अत्रिका पुत्र द्वित ऋषि तिम्रा लागि पवित्र हव्य लिएर आउँछन्। उनलाई तिमी आफ्ना बलले महानता प्रदान गर। किनभने उनी तिम्रा लागि सधैंभरि सोमरस र स्तुति प्रस्तुत गर्दछन्।

तं वो दीर्घायुशोचिषं गिरा हुवे मघोनाम्।
अरिष्टो येषां रथो व्यश्वदावन्नीयते ॥३॥

हे अश्वदाता अग्निदेव ! तिमी लामो आयु र तेजस्वी स्वरूप भएका छौ। हामी आफ्ना धनी यजमानका लागि उत्तम स्तुतिले आह्वान गर्दछौं। त्यसबाट ती धनीका रथ जीवन सङ्ग्राममा निर्बाध रूपमा गतिशील रहून्।

चित्रा वा येषु दीधितिरासन्नुक्था पान्ति ये।
स्तीर्णं बर्हिः स्वर्णरे श्रवांसि दधिरे परि ॥४॥

ऋत्विक्हरू अनेकौं प्रकारले यज्ञ आदि कार्य सम्पादन गरिरहन्छन्। उनीहरू उत्तम स्तोत्र गाउँदै यज्ञको रक्षा गर्न अग्नि जगाउँछन्। ऋत्विक्हरू आफ्ना यजमानलाई स्वर्गको सुख प्राप्त गराउने यज्ञमा विछाइएको कुशामा मनग्गे हविष्यान्न राख्छन्।

ये मे पञ्चाशतं ददुरश्वानां सधस्तुति।
द्युमदग्ने महि श्रवो बृहत्कृधि मघोनां नृवदमृत नृणाम् ॥५॥

हे अविनाशी अग्निदेव ! तिम्रो स्तुति गरिसकेपछि जुन धनी यजमानले हामीलाई पचास अश्व प्रदान गर्दछन्, तिमी त्यस्ता यजमानलाई दीप्तिमान् र धेरै सेवकहरूले युक्त अन्न प्रदान गर।

[सूक्त - १९]

ऋषि - वव्रि आत्रेय। देवता - अग्नि। छन्द - गायत्री अनुष्टुप् विराड्रूपा।

अभ्यवस्थाः प्र जायन्ते प्र वव्रेर्वव्रिश्चिकेत। उपस्थेमातुर्वि चष्टे ॥१॥

अग्निदेव मातारूपी पृथ्वीका काखमा प्रकट भएर सबैलाई हेर्दछन्। अग्निदेव वव्रि ऋषिको स्थितिअनुसार उनको हवि ग्रहण गरुन् अथवा शरीरधारीका शरीरको स्थितिअनुसार उनको पालनपोषण गरुन्।

जुहुरे वि चितयन्तोऽनिमिषं नृम्णं पान्ति। आ दृळ्हां पुरं विविशुः ॥२॥

हे अग्निदेव ! तिम्रो प्रभाव जानेर जुन याज्ञिक सधैं तिमीलाई आह्वान गर्दछन्, हवि र स्तोत्रले तिम्रा बलको रक्षा गर्छन्, तिनीहरू शत्रुका दुर्गम सहर भत्काएर त्यहाँ पस्छन्।

आ श्वैत्रेयस्य जन्तवो द्युमद्वर्धन्त कृष्टयः।
निष्कग्रीवो बृहदुक्थ एना मध्वा न वाजयुः ॥३॥

संसारमा जन्मेर महान् स्तोत्र गाउने, अन्नको खोजी गर्ने र कण्ठमा सुनका गहना लगाउने मानिसले अति मधुर स्तोत्रले अग्निका दीप्तिलाई प्रवृद्ध गराउँछन्।

प्रियं दुग्धं न काम्यमजामि जाम्योः सचा।
घर्मो न वाजजठरोऽदब्धः शश्वतो दभः ॥४॥

यज्ञले झैं हविष्यान्न पेटमा राखेर शत्रुबाट अहिंसित हुँदै शत्रुको हिंसा गर्ने अग्निदेव आकाश र पृथ्वीका सहायक हुन्। अग्निदेव दुधजस्तै रुचाइने र निर्दोष हुनाले हाम्रो हितकारी स्तोत्र सुनून्।

क्रीळन्नो रश्म आ भुवः सं भस्मना वायुना वेविदानः।
ता अस्य सन्धृषजो न तिग्माः सुसंशिता वक्ष्यो वक्षणेस्थाः ॥५॥

हे प्रदीप्त अग्निदेव ! काठमा क्रीडा गर्दै वायुबाट प्रेरित, भस्मद्वारा उद्भासित हुने तिमी हामीतिर फर्क। काठका वक्षमा रहेका तिम्रा ज्वालाहरू अत्यन्त तीक्ष्ण र शत्रुविनाशक छन्। ती ज्वालाहरू हाम्रा निम्ति कष्टदायक तीक्ष्ण नहोऊन्।

[सूक्त - २०]

ऋषि - प्रयस्वान् अत्रिगण। देवता - अग्नि। छन्द - अनुष्टुप् पङ्क्ति।

यमग्ने वाजसातम त्वं चिन्मन्यसे रयिम्।
तं नो गीर्भिः श्रवाय्यं देवत्रा पनया युजम् ॥१॥

हे अन्नप्रदायक अग्निदेव ! हामीले प्रदान गरेको हव्यरूप धन तिमी स्वीकार गर्दछौ। हाम्रा स्तुतिका साथ उक्त हव्यरूपी धन देवताकहाँ पुऱ्याइदेऊ।

ये अग्ने नेरयन्ति ते वृद्धा उग्रस्य शवसः।
अप द्वेषो अप ह्वरोऽन्यव्रतस्य सश्चिरे ॥२॥

हे अग्निदेव ! जुन व्यक्ति पशु आदि धनले युक्त भएर पनि तिमीलाई हवि प्रदान गर्दैन, त्यस्तो

व्यक्ति तिम्रा उग्र बलको सामना गरेर बलविहीन हुन्छ। जसले वैदिक कर्मसित द्वेष या विरोधी भाव राख्दछ, त्यो पनि तिमीबाट हिंसित हुन्छ।

**होतारं त्वा वृणीमहेऽग्ने दक्षस्य साधनम्।**
**यज्ञेषु पूर्व्यं गिरा प्रयस्वन्तो हवामहे॥३॥**

हे अग्निदेव ! तिमी देवताहरूका आह्वानकर्ता, बलप्रदाता र अन्नले सम्पन्न हौ। हामी तिम्रो वरण गर्दछौं। यज्ञमध्ये श्रेष्ठ तिमीलाई हामी स्तुति गर्दछौं।

**इत्था यथा त ऊतये सहसावन्दिवेदिवे।**
**राय ऋताय सुक्रतो गोभिः ष्याम सधमादो वीरैः स्याम सधमादः॥४॥**

हे बलवान् अग्निदेव ! हामी प्रतिदिन तिम्रा आश्रयमा संरक्षित रहौं। हे उत्तम कर्म भएका अग्निदेव ! हामी यज्ञादि कार्यका निम्ति धन प्राप्त गर्न पुरुषार्थ गरौं। हामी गाई आदि पशुधन र उत्तम वीर पुत्र पाएर सुखी हौं, तिमी यस्तै गरिदेऊ।

[सूक्त - २१]

**ऋषि** - सस आत्रेय। **देवता** - अग्नि। **छन्द** - अनुष्टुप् पङ्क्ति।

**मनुष्वत्त्वा नि धीमहि मनुष्वत्समिधीमहि।**
**अग्ने मनुष्वदङ्गिरो देवान्देवयते यज॥१॥**

हे अग्निदेव ! मनुले जस्तै तिमीलाई स्थापित गरेर हामी प्रज्वलित गर्दछौं। हे अङ्गिरा अग्निदेव ! मनुको जस्तै देवत्वको आशा गर्ने यजमानका लागि तिमी यजन गर।

**त्वं हि मानुषे जनेऽग्ने सुप्रीत इध्यसे।**
**स्रुचस्त्वा यन्त्यानुषक्सुजात सर्पिरासुते॥२॥**

हे अग्निदेव ! स्तोत्रले अत्यन्त प्रसन्न भएपछि तिमी मानिसका लागि प्रज्वलित हुन्छौ। उत्तम गतिले उत्पन्न भएका हे अग्निदेव ! घिउयुक्त हविले भरिएका पात्रहरू तिमीलाई निरन्तर प्राप्त हुन्छन्।

**त्वां विश्वे सजोषसो देवासो दूतमक्रत।**
**सपर्यन्तस्त्वा कवे यज्ञेषु देवमीडते॥३॥**

हे समस्त ज्ञानका अधिपति अग्निदेव ! सबै देवताहरू प्रसन्न भएर तिमीलाई दूतका रूपमा नियुक्त गरेका छन्। त्यसैले यज्ञमा तिम्रो सेवा गर्दै देवताहरूलाई बोलाउनका लागि यजमानहरू तिम्रो स्तुति गर्दछन्।

**देवं वो देवयज्ययाग्निमीडीत मर्त्यः।**
**समिद्धः शुक्र दीदिह्यृतस्य योनिमासदः ससस्य योनिमासदः॥४॥**

हे तेजस्वी अग्निदेव ! मानिसहरू देवताको यजन गर्नका लागि तिम्रो स्तुति गर्दछन्। तिमी हविले प्रवृद्ध भएर दीप्तिमान् हुन्छौ। तिमी सस ऋषिका यज्ञवेदीमा प्रतिष्ठित होऊ अथवा कृषिको हरियालीका रूपमा प्रकट होऊ।

[सूक्त - २२]

**ऋषि** - विश्वसामा आत्रेय। **देवता** - अग्नि। **छन्द** - अनुष्टुप् पङ्क्ति।

**प्र विश्वसामन्नत्रिवदर्चा पावकशोचिषे।**
**यो अध्वरेष्वीड्यो होता मन्द्रतमो विशि॥१॥**

हे विश्वसामा ऋषि ! तिमी पवित्र दीप्ति हुने अग्निदेवको पूजा अत्रि ऋषिले झैं गर। अग्निदेव सबै ऋषिबाट स्तुत्य छन्। यी देवतालाई बोलाउने र अत्यन्त पूजनीय छन्।

**न्यग्निं जातवेदसं दधाता देवमृत्विजम्।**
**प्र यज्ञ एत्वानुषगद्या देवव्यचस्तमः॥२॥**

हे यजमानहरू हो ! सबै प्राणीलाई जानेका, दिव्य यज्ञकर्ता अग्निदेवलाई स्थापित गर। देवताहरूका प्रीतिकर र यज्ञको साधनरूप हवि अग्निदेवका लागि हामी प्रदान गरौं।

**चिकित्विन्मनसं त्वा देवं मर्तास ऊतये।**
**वरेण्यस्य तेऽवस इयानासो अमन्महि॥३॥**

हे अग्निदेव ! तिमी ज्ञानले सम्पन्न र मनले दीप्तिमान् छौ। आफ्नो रक्षाका निम्ति हामी सबै मानिस तिम्रा अगाडि उपस्थित छौं र असल हविले सन्तुष्ट गराउँदै स्तुति गर्दछौं।

अग्ने चिकिद्ध्य१स्य न इदं वचः सहस्य।
तं त्वा सुशिप्र दम्पते स्तोमैर्वर्धन्त्यत्रयो गीर्भिः शुम्भन्त्यत्रयः ॥४॥

हे बलका पुत्र अग्निदेव ! तिमी हाम्रो उत्तम कुरो बुफ। हे सुन्दर चिउँडो र नाक भएका गृहपालक अग्निदेव ! अत्रिका वंशजहरूले तिमीलाई उत्तम स्तोत्रले प्रवृद्ध गर्दछन् र उत्तम वाणीले सुशोभित गर्दछन्।

[सूक्त - २३]

ऋषि - द्युम्न विश्वचर्षणि आत्रेय। देवता - अग्नि। छन्द - अनुष्टुप् पङ्क्ति।

अग्ने सहन्तमा भर द्युम्नस्य प्रासहा रयिम्।
विश्वा यश्चर्षणीरभ्या३सा वाजेषु सासहत् ॥१॥

हे अग्निदेव ! द्युम्न ऋषिका लागि शत्रुहरूको ऐश्वर्य जितेर ल्याउने एउटा वीर पुत्र प्रदान गर। उसले स्तोत्रले युक्त भएर युद्धमा सम्पूर्ण शत्रुलाई पराजित गर्न सकोस्।

तमग्ने पृतनाषहं रयिं सहस्व आ भर।
त्वं हि सत्यो अद्भुतो दाता वाजस्य गोमतः ॥२॥

हे बलशाली अग्निदेव ! तिमी सत्यरूप, अद्भुत र अन्न प्रदान गर्ने हौ। हाम्रा लागि तिमी शत्रुका सेनाको ऐश्वर्य जित र त्यो हामीलाई देऊ।

विश्वे हि त्वा सजोषसो जनासो वृक्तबर्हिषः।
होतारं सद्मसु प्रियं व्यन्ति वार्या पुरु ॥३॥

हे अग्निदेव ! तिमी देवताहरूलाई आह्वान गर्ने होताका रूपमा रहेका सबैभन्दा हितकारी हौ। उचित स्नेह भएका र यज्ञका लागि कुश ल्याउने ऋत्विक्हरू तिमीसित मन परेको धन माग्दछन्।

स हि ष्मा विश्वचर्षणिरभिमाति सहो दधे।
अग्न एषु क्षयेष्वा रेवन्नः शुक्र दीदिहि द्युमत्पावक दीदिहि ॥४॥

हे अग्निदेव ! विश्वचर्षणि ऋषिले शत्रुका सङ्घर्षक बल धारण गरुन्। हे तेजस्वी अग्निदेव ! हाम्रा घरमा धनको प्रकाश फिँजाऊ। हे पापविनाशक अग्निदेव ! तिमी उत्तम तेजले युक्त भएर देदीप्यमान होऊ।

[सूक्त - २४]

ऋषि - बन्धु सुबन्धु श्रुतबन्धु लौपायन। देवता - अग्नि। छन्द - द्विपदा विराट्।

अग्ने त्वं नो अन्तम उत त्राता शिवो भवा वरूथ्यः ॥१॥

हे अग्निदेव ! तिमी हाम्रा अति नजिकै असल संरक्षक र मङ्गलकारी भएर रहन्छौ।

वसुरग्निर्वसुश्रवा अच्छा नक्षि द्युमत्तमं रयिं दाः ॥२॥

सबैलाई आश्रय दिने, धनवान्हरूमा प्रथम हे अग्निदेव ! तिमी हाम्रा नजिकै सहजै आऊ र तेजस्वितायुक्त भएर हामीलाई धन प्रदान गर।

स नो बोधि श्रुधी हवमुरुष्या णो अघायतः समस्मात् ॥३॥

हे अग्निदेव ! हामीहरूलाई तिमी चिन, हाम्रो आह्वान सुन र समस्त पापीबाट रक्षा गर।

तं त्वा शोचिष्ठ दीदिवः सुम्नाय नूनमीमहे सखिभ्यः ॥४॥

हे तेजस्वी र प्रकाशवान् अग्निदेव ! मित्र आदि स्नेही आफन्तका लागि सुखको कामना गर्दै निश्चित रूपमा हामी तिम्रो प्रार्थना गर्दछौं।

[सूक्त - २५]

ऋषि - वसूयु आत्रेय। देवता - अग्नि। छन्द - अनुष्टुप्।

अच्छा वो अग्निमवसे देवं गासि स नो वसुः।
रासत्पुत्र ऋषूणामृतावा पर्षति द्विषः ॥१॥

हे यजमानहरू हो ! आफ्नो रक्षा गर्ने रहर गरेर तिमीहरू दिव्य अग्निदेवको स्तवन गर। अग्निदेवले हामीलाई आश्रयको स्थान उपलब्ध गराऊन्। ऋषिहरूबाट पुत्रका रूपमा पोषित सत्यस्वरूप अग्निदेवले हामीलाई शत्रुबाट पार लगाऊन्।

स हि सत्यो यं पूर्वे चिद्देवासश्चिद्यमीधिरे।
होतारं मन्द्रजिह्वमित्सुदीतिभिर्विभावसुम् ॥२॥

उहिले नै ऋषि र देवताहरूले अग्निदेवलाई प्रज्वलित गराएका थिए। जुन अग्निदेव देवताहरूका आह्वानकर्ता हुन्, प्रसन्नताप्रदायक जिब्रो भएका, उत्तम दीप्तिले युक्त र शुभ्र प्रभासम्पन्न छन्, तिनै अग्निदेव सत्य सङ्कल्पले अटल हुन्छन्।

स नो धीती वरिष्ठया श्रेष्ठया च सुमत्या।
अग्ने रायो दिदीहि नः सुवृक्तिभिर्वरेण्य ॥३॥

हे अग्निदेव ! तिमी उत्तम स्तोत्रले स्तुति गरिने र वरण गर्न योग्य छौ। आफ्नो असल धारण शक्ति र उत्कृष्ट बुद्धिले सन्तुष्ट होऊ। हाम्रा हव्य र स्तोत्रले सन्तुष्ट भएर ऐश्वर्य प्रदान गर।

अग्निर्देवेषु राजत्यग्निर्मर्तेष्वाविशन्।
अग्निर्नो हव्यवाहनोऽग्निं धीभिः सपर्यत ॥४॥

अग्निदेव देवताहरूमा प्रतिष्ठित छन् र मानिसले आह्वान गर्दा मानिसका बीचमा पनि प्रवेश गर्दछन्। देवताहरूका लागि हव्य आदि पदार्थ जसले वहन गर्दछन्, हे यजमान हो ! उनै अग्निदेवलाई तिमीहरू बुद्धिपूर्वक स्तुतिद्वारा सेवा गर।

अग्निस्तुविश्रवस्तमं तुविब्रह्माणमुत्तमम्।
अतूर्तं श्रावयत्पतिं पुत्रं ददाति दाशुषे ॥५॥

अग्निदेव हविदाता यजमानहरूलाई पुत्र प्रदान गरुन्। त्यो पुत्र विभिन्न अन्नले युक्त, धेरै स्तोत्र रचना गर्ने, उत्तम, अवध्य र उत्तम कर्मले पूर्वजहरूको यश बढाउने होस्।

अग्निर्ददाति सत्पतिं सासाह यो युधा नृभिः।
अग्निरत्यं रघुष्यदं जेतारमपराजितम् ॥६॥

अग्निदेवले हामीलाई पुत्र प्रदान गरुन्। ऊ हामीलाई सहयोग गर्ने, शत्रुलाई पराजित गर्ने र सत्यको पालना गर्ने होस्। अग्निदेवले हामीलाई शत्रु जित्न सक्ने कसैसित नहार्ने र छिटो कुद्ने अश्व पनि प्रदान गरुन्।

यद्वाहिष्ठं तदग्नये बृहदर्च विभावसो।
महिषीव त्वद्रयिस्त्वद्वाजा उदीरते ॥७॥

अग्निदेवको स्तुति शीघ्र प्रभावकारी स्तोत्रले गरिन्छ। दीप्तिमान् अग्निदेव हामीलाई मनग्गे धनधान्य प्रदान गर्ने कृपा गरुन्।

तव द्युमन्तो अर्चयो ग्रावेवोच्यते बृहत्।
उतो ते तन्यतुर्यथा स्वानो अर्त त्मना दिवः ॥८॥

हे अग्निदेव ! तिम्रो शिखा सर्वत्र दीप्तियुक्त छ। तिमी सोमका लहरा कुट्ने ढुङ्गोजस्तै महत्त्व भएका छौ। तिमी स्वयं प्रकाशयुक्त छौ। मेघको गर्जनजस्तै शब्द गर्दछौ।

एवाँ अग्निं वसूयवः सहसानं ववन्दिम।
स नो विश्वा अति द्विषः पर्षन्नावेव सुक्रतुः ॥९॥

हामी धन खोज्ने मानिस बलवान् अग्निदेवलाई स्तोत्रले मनग्गे स्तुति गर्दछौँ। उत्तम कर्मले सम्पन्न अग्निदेव हामीलाई शत्रुबाट नौकाले नदी पार लगाएझैँ पार लगाऊन्।

[सूक्त - २६]

**ऋषि** - वसूयु आत्रेय। **देवता** - अग्नि विश्वेदेवा। **छन्द** - गायत्री।

अग्ने पावक रोचिषा मन्द्रया देव जिह्वया। आ देवान्वक्षि यक्षि च ॥१॥

हे पवित्रता प्रदान गर्ने अग्निदेव ! प्रसन्न गराउने ज्वालारूपी जिब्राले देवताहरूलाई आमन्त्रित गर र उनीहरूका निम्ति यज्ञ सम्पन्न गर।

तं त्वा घृतस्नवीमहे चित्रभानो स्वर्दृशम्। देवाँ आ वीतये वह ॥२॥

घिउबाट उत्पन्न हुने, अद्‌भुत तेजस्वी, सबैलाई देख्ने हे अग्निदेव ! हामी तिम्रो प्रार्थना गर्दछौँ। हवि सेवन गर्नका लागि तिमी देवताहरूलाई बोलाऊ।

वीतिहोत्रं त्वा कवे द्युमन्तं समिधीमहि। अग्ने बृहन्तमध्वरे ॥३॥

हे ज्ञानसम्पन्न अग्निदेव ! तिमी यज्ञका अनुरागी, तेजस्वी र महान् छौ। तिमीलाई हामी यज्ञमा प्रज्वलित गर्दछौँ।

**अग्ने विश्वेभिरा गहि देवेभिर्हव्यदातये। होतारं त्वा वृणीमहे ॥४॥**

हे अग्निदेव ! तिमी सबै देवताहरूका साथ हविदाता यजमानका लागि यज्ञमा आएर बसिदेऊ। हामी देवताहरूलाई आह्वान गर्ने होताका रूपमा तिमीलाई वरण गर्दछौं।

**यजमानाय सुन्वत आग्ने सुवीर्यं वह। देवैरा सत्सि बर्हिषि ॥५॥**

हे अग्निदेव ! तिमी सोमसवन गर्ने यजमानका लागि गतिलो पराक्रम धारण गर र देवताहरूसँगै ओछ्याइएका कुशमा बस।

**समिधानः सहस्रजिदग्ने धर्माणि पुष्यसि। देवानां दूत उक्थ्यः ॥६॥**

हे सहस्र शत्रु विजेता अग्निदेव ! तिमी हव्य पदार्थले प्रदीप्त भएर, स्तोत्रले प्रशंसित भएर, देवताका दूतका रूपमा धार्मिक अनुष्ठान उचित रूपले पुष्ट गराउँछौ।

**न्यग्निं जातवेदसं होत्रवाहं यविष्ठ्यम्। दधाता देवमृत्विजम् ॥७॥**

हे यजमानहरू हो ! अग्निदेवलाई राम्ररी स्थापित गर। अग्निदेव सबै प्राणीलाई जान्ने, यज्ञ सम्पादन गर्ने र अत्यन्त दीप्तिमान युवा हुन्।

**प्र यज्ञ एत्वानुषगद्या देवव्यचस्तमः। स्तृणीत बर्हिरासदे ॥८॥**

हे ऋत्विक्हरू हो ! तिमीहरू अग्निदेवलाई विराजमान हुनका लागि कुश ओछ्याओ। तेजस्वी स्तोताले प्रदान गरेको हविष्यात्र देवताहरूलाई सजिलै प्राप्त होस्।

**एदं मरुतो अश्विना मित्रः सीदन्तु वरुणः। देवासः सर्वया विशा ॥९॥**

मरुत्हरू, दुवै अश्विनीकुमार, मित्रदेव, वरुणदेव र अन्यान्य सबै देवताहरू आफ्ना प्रजाका साथ हाम्रा यज्ञस्थानमा प्रतिष्ठित होऊन्।

## [सूक्त - २७]

**ऋषि** - त्र्यरुण त्रसदस्यु पौरुकुत्स। **देवता** - इन्द्राग्नि। **छन्द** - त्रिष्टुप् अनुष्टुप्।

**अनस्वन्ता सत्पतिर्मामहे मे गावा चेतिष्ठो असुरो मघोनः।**
**त्रैवृष्णो अग्ने दशभिः सहस्रैर्वैश्वानर त्र्यरुणश्चिकेत ॥१॥**

हे वैश्वानर अग्निदेव ! तिमी सज्जनका स्वामी, ज्ञानवान्, बलशाली र ऐश्वर्यवान् छौ। त्रिवृष्णका पुत्र त्र्यरुणले गाडासहितका दुई गोरु र दस हजार सुनका मुद्रा प्रदान गरेर प्रसिद्धि प्राप्त गरेका थिए।

**यो मे शता च विंशतिं च गोनां हरी च युक्ता सुधुरा ददाति।**
**वैश्वानर सुष्टुतो वावृधानोऽग्ने यच्छ त्र्यरुणाय शर्म ॥२॥**

जसले हामीलाई सयौं गाई र बीसौं असल धुरामा नारिएका अश्व प्रदान गरेका छन्, हे वैश्वानर अग्निदेव ! हाम्रा असल मन्त्रले दन्केर उनै त्र्यरुणलाई सुखप्रद आश्रय देऊ।

**एवा ते अग्ने सुमतिं चकानो नविष्ठाय नवमं त्रसदस्युः।**
**यो मे गिरस्तुविजातस्य पूर्वीर्युक्तेनाभि त्र्यरुणो गृणाति ॥३॥**

उहिले नै हाम्रो वाणीबाट प्रभावित भएका त्र्यरुणले यो लैजाओ भनेका थिए। उसै गरी हे अग्निदेव ! हाम्रा नयाँ स्तुतिले खुसी भएका तिमीसित असल बुद्धि माग्ने त्रसदस्युले पनि हामीलाई यो लैजाओ नै भने।

**यो म इति प्रवोचत्यश्वमेधाय सूरये। दद‌दृचा सनिं यते ददन्मेधामृतायते ॥४॥**

हे परमेश्वरस्वरूप अग्निदेव ! जब कुनै विद्वान् पुरुष अश्वमेध ऋषिलाई आफ्नत हुन् भन्दछ, तिमी त्यस्ता प्रयत्नशीललाई सात्विक यज्ञका लागि ऋचारूपी दिव्य सम्पदा र असल मेधा प्रदान गर्दछौ।

**यस्य मा परुषाः शतमुद्धर्षयन्त्युक्षणः।**
**अश्वमेधस्य दानाः सोमाइव त्र्याशिरः ॥५॥**

जुन अश्वमेध ऋषिले पाएका सयौं गोरु र सेचन प्रवाहले हामीलाई हर्षित गराउँछन्, उनै अश्वमेधका त्र्याशिर दानले सोमको जस्तै आनन्द प्रदान गरोस्।

**इन्द्राग्नी शतदाव्न्यश्वमेधे सुवीर्यम्। क्षत्रं धारयतं बृहद्दिवि सूर्यमिवाजरम् ॥६॥**

हे इन्द्राग्निदेव हो ! सयौं किसिमका ऐश्वर्य प्रदान गर्ने अश्वमेध ऋषिलाई तिमीहरू असल पुरुषार्थ र संरक्षण बलले सूर्यजस्तै विशालता र अजरता प्रदान गर।

[सूक्त - २८]

**ऋषि** - विश्ववारा आत्रेयी। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप् जगती अनुष्टुप् गायत्री।

**समिद्धो अग्निर्दिवि शोचिरश्रेत्प्रत्यङ्ङुषसमुर्विया वि भाति।**

**एति प्राची विश्ववारा नमोभिर्देवाँ ईळाना हविषा घृताची ॥१॥**

प्रदीप्त अग्निदेव दीप्तिमान् अन्तरिक्षमा आफ्ना तेजले प्रकाशित भएर उषाका सम्मुख विस्तीर्ण रूपमा विशेष प्रभायुक्त हुन्छन्। इन्द्र आदि देवताहरूको स्तवन गर्दै पुरोडाश र घिउ आदिले युक्त सुरो लिएर विश्ववारा पूर्वतिर च्याउँदै अग्नितिर जान्छिन्।

**समिध्यमानो अमृतस्य राजसि हविष्कृण्वन्तं सचसे स्वस्तये।**

**विश्वं स धत्ते द्रविणं यमिन्वस्यातिथ्यमग्ने नि च धत्त इत्पुरः ॥२॥**

हे अग्निदेव ! तिमी प्रज्वलित भएर अमृततत्त्व प्रकाशित गर्दछौ। हव्यदाता यजमानलाई तिमी कल्याणले युक्त गराउँछौ। तिमी जुन यजमानका नजिक जान्छौ, त्यसले सम्पूर्ण ऐश्वर्य पाउँछ। हे अग्निदेव ! तिम्रो आतिथ्यसुहाउँदो हव्य आदि पदार्थ त्यस यजमानले तिम्रा सम्मुख स्थापित गर्दछ।

**अग्ने शर्ध महते सौभगाय तव द्युम्नान्युत्तमानि सन्तु।**

**सं जास्पत्यं सुयममा कृणुष्व शत्रूयतामभि तिष्ठा महांसि ॥३॥**

हे अग्निदेव ! उत्तम सौभाग्यका निम्ति हाम्रा शत्रु पराजित गर। तिम्रो तेज उत्कृष्ट छ। तिमी दाम्पत्य सम्बन्धलाई सुखी र सुनियोजित गर अनि शत्रुको प्रभाव समाप्त गर।

**समिद्धस्य प्रमहसोऽग्ने वन्दे तव श्रियम्।**

**वृषभो द्युम्नवाँ असि समध्वरेष्विध्यसे ॥४॥**

हे अग्निदेव ! तिमी प्रज्वलित भएर दीप्तिमान् भएपछि तिम्रो शोभालाई हामी स्तुति गर्दछौं। तिमी अभीष्ट प्रदाता र तेजस्वी छौ र यज्ञमा उचित किसिमले प्रदीप्त हुन्छौ।

**समिद्धो अग्न आहुत देवान्यक्षि स्वध्वर। त्वं हि हव्यवाळसि ॥५॥**

हे अग्निदेव ! तिमी यजमानबाट बोलाइन्छौ। तिमी शोभायुक्त यज्ञका सम्पादक हौ। तिमी उचित रूपले प्रदीप्त भएर इन्द्र आदि देवताहरूको यजन गर। किनभने तिमी नै हव्य आदि पदार्थलाई वहन गर्दछौ।

**आ जुहोता दुवस्यताग्निं प्रयत्यध्वरे। वृणीध्वं हव्यवाहनम् ॥६॥**

हे ऋत्विक्हरू हो ! हाम्रा यज्ञमा प्रवृत्त भएर हव्य वहन गर्ने अग्निदेवलाई आहुति अर्पित गर। स्तुतिद्वारा उनको सेवा गर र देवताका दूतका रूपमा उनलाई वरण गर।

[सूक्त - २९]

**ऋषि** - गौरिवीति शाक्त्य। **देवता** - इन्द्र उशना। **छन्द** - त्रिष्टुप्।

**त्र्यर्यमा मनुषो देवताता त्री रोचना दिव्या धारयन्त।**

**अर्चन्ति त्वा मरुतः पूतदक्षास्त्वमेषामृषिरिन्द्रासि धीरः ॥१॥**

हे इन्द्रदेव ! मनुका यज्ञमा जुन तीन गुण छन् र अन्तरिक्षमा उत्पन्न तीन दिव्य तेज छन्, तिनलाई मरुत्हरूले धारण गरेका छन्। हे इन्द्रदेव ! तिमी यी मरुत्हरूका द्रष्टा हौ।

**अनु यदीं मरुतो मन्दसानमार्चन्निन्द्रं पपिवांसं सुतस्य।**

**आदत्त वज्रमभि यदहिं हन्नपो यह्वीरसृजत्सर्तवा उ ॥२॥**

पेलेर तयार पारेको सोम पान गरेर खुसी भएका मरुत्हरूले जब इन्द्रदेवको स्तुति गरे, त्यस बेला इन्द्रदेवले वज्र हातमा लिएर वृत्रलाई मारे। उसले रोकेर राखेको विशाल जलप्रवाह बग्नका लागि मुक्त भयो।

**उत ब्रह्माणो मरुतो मे अस्येन्द्रः सोमस्य सुषुतस्य पेयाः।**

**तद्धि हव्यं मनुषे गा अविन्ददहन्नहिं पपिवाँ इन्द्रो अस्य ॥३॥**

हे महान् मरुत्हरू हो ! राम्रोसित पेलेर तयार गरेको यो सोमरस इन्द्रदेवसँग पान गर। सोमयुक्त हवि पान गर्दै तिमीहरू यजमानलाई गाई प्राप्त गराओ। यही सोम पिएर इन्द्रदेवले वृत्रलाई मारेका थिए।

आद्रोदसी वितरं वि ष्कभायत्संविव्यानश्चिद्धियसे मृगं कः।
जिगर्तिमिन्द्रो अपजर्गुराणः प्रति श्वसन्तमव दानवं हन् ॥४॥

सोमपान गरिसकेपछि इन्द्रदेवले द्यावापृथिवीलाई निश्चल गराए र आक्रामक मुद्रामा इन्द्रदेवले मृगको जस्तो छल गर्ने वृत्रलाई डर देखाए। डरले लुकेका वृत्रले लामो सास फेर्दै थियो। त्यसै बेला इन्द्रदेवले उसको प्रपञ्च नष्ट गरेर त्यसलाई मारिदिए।

अध क्रत्वा मघवन्तुभ्यं देवा अनु विश्वे अददुः सोमपेयम्।
यत्सूर्यस्य हरितः पतन्तीः पुरः सतीरुपरा एतशे कः ॥५॥

हे इन्द्रदेव ! सूर्यका अगाडि बढ्ने घोडालाई तिमीले एतशसँग संयुक्त गरायौ। तिम्रा कार्यले हर्षित भएर विश्वेदेवहरूले तिमीलाई पान गर्नका लागि सोम प्रस्तुत गरे।

नव यदस्य नवतिं च भोगान्त्साकं वज्रेण मघवा विवृश्चत्।
अर्चन्तीन्द्रं मरुतः सधस्थे त्रैष्टुभेन वचसा बाधत द्याम् ॥६॥

महान् इन्द्रदेवले शत्रुका उनान्सय सहर एकै क्षणमा वज्रले ध्वस्त गराएर द्युलोकलाई अड्याए। मरुत्‌हरूले सङ्ग्रामस्थलमा त्रिष्टुप् छन्दका ऋचाले इन्द्रदेवको स्तुति गरे।

सखा सख्ये अपचत्तूयमग्निरस्य क्रत्वा महिषा त्री शतानि।
त्री साकमिन्द्रो मनुषः सरांसि सुतं पिबद्‌वृत्रहत्याय सोमम् ॥७॥

इन्द्रदेवका मित्र अग्निले इन्द्रको कार्यक्षमता बढाउनका लागि तीन सय प्राणधारारूपी महिषहरू पकाए। वृत्रलाई मार्नका लागि इन्द्रदेवले मानिसले तयार गरेका तीन भाँडा सोम एकै चोटि पान गरे।

त्री यच्छता महिषाणामघो मास्त्री सरांसि मघवा सोम्यापाः।
कारं न विश्वे अह्वन्त देवा भरमिन्द्राय यदहिं जघान ॥८॥

हे इन्द्रदेव ! तीन सय महिषरूपी प्राणप्रवाहलाई स्वीकार गरेर सोमका तीन पात्र पान गरेपछि वृत्रलाई मार्‍यौ। देवताहरूले कुशल कर्मीजस्ता इन्द्रदेवलाई आह्वान गरे।

उशना यत्सहस्यैरयातं गृहमिन्द्र जूजुवानेभिरश्वैः।
वन्वानो अत्र सरथं ययाथ कुत्सेन देवैरवनोर्ह शुष्णम् ॥९॥

हे इन्द्रदेव ! तिमी र उशना नामका दूरदर्शी कवि दुवै अत्यन्त बलिष्ठ र वेगवान् अश्वद्वारा घरमा गएपछि तिमीले शत्रुलाई मार्‍यौ। कुत्स र अरू देवताहरूसँग रथमा चढ्यौ। हे इन्द्रदेव ! तिमीले शुष्ण असुरलाई पनि वध गर्‍यौ।

प्रान्यच्चक्रमवृहः सूर्यस्य कुत्सायान्यद्वरिवो यातवेऽकः।
अनासो दस्यूँरमृणो वधेन नि दुर्योण आवृणङ् मृध्रवाचः ॥१०॥

हे अग्निदेव ! तिमीले सूर्यका रथबाट एउटा चक्र छुट्यायौ र अरू चक्र कुत्सलाई प्रतिष्ठा दिनका लागि तयार गर्‍यौ। स्वर्गबाट खस्दा ठूलो हल्ला गर्ने दस्युलाई वज्रले मारेर सङ्ग्रामा विजयी भयौ।

स्तोमासस्त्वा गौरिवीतेरवर्धन्नरन्धयो वैदथिनाय पिप्रुम्।
आ त्वामृजिश्वा सख्याय चक्रे पचन्पक्तीरपिबः सोममस्य ॥११॥

हे इन्द्रदेव ! गौरिवीतिका स्तोत्रले तिमीलाई हौस्याउँदा तिमीले विदथिका पुत्र ऋजिश्वाको सुरक्षा गर्नका लागि पिप्रुलाई मार्‍यौ। त्यति बेला ऋजिश्वाले तिमीसँगको मित्रता बलियो बनाउन पुरोडाश पकाएर समर्पित गरे। उनले अर्पण गरेको सोम पनि तिमीले पान गर्‍यौ।

नवग्वासः सुतसोमास इन्द्रं दशग्वासो अभ्यर्चन्त्यर्कैः।
गव्यं चिदूर्वमपिधानवन्तं तं चित्नरः शशमाना अप व्रन् ॥१२॥

सोमयज्ञ गर्ने नवग्व र दशग्वले इन्द्रदेवका अगाडि अर्चनीय स्तोत्रले स्तुति गरे। इन्द्रदेव खुसी भएर आफ्ना सहायक मरुत्‌हरूद्वारा असुरलाई मारेर तिनले लुकाएका गाईको बथान फुक्का गराए।

कथो नु ते परि चराणि विद्वान्वीर्या मघवन्या चकर्थ।
या चो नु नव्या कृणवः शविष्ठ प्रेदु ता ते विदथेषु ब्रवाम ॥१३॥

हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमीले जुन पराक्रमी कार्य गरेर देखायौ, तिनलाई हामीले जानेर तिम्रो सेवा कसरी गरौं ? हे बलशाली इन्द्रदेव ! तिमीले जुन नयाँ पराक्रमी कार्य गर्‍यौ त्यस पराक्रमको बयान उचित रूपले हामी यज्ञमा गर्नेछौं।

एता विश्वा चकृवाँ इन्द्र भूर्यपरीतो जनुषा वीर्येण।
या चिन्नु वज्रिन्कृणवो दधृष्वान्न ते वर्ता तविष्या अस्ति तस्याः ॥१४॥

हेइन्द्रदेव ! तिमी शत्रुका बीचमा अडिग सङ्घर्षशील छौ। तिमी जन्मिएपछि आफ्ना पराक्रमले भुवनहरू बनायौ। हे वज्रधारी इन्द्रदेव ! शत्रु मारेर जुन पराक्रम गर्‍यौ, तिम्रो त्यो बल रोक्न सक्ने अरू कोही पनि छैन।

इन्द्र ब्रह्म क्रियमाणा जुषस्व या ते शविष्ठ नव्या अकर्म।
वस्त्रेव भद्रा सुकृता वसूयू रथं न धीरः स्वपा अतक्षम् ॥१५॥

हे अत्यन्त बलशाली इन्द्रदेव ! तिम्रा लागि हामीले नयाँ स्तोत्र बनायौं। हामीले चढाएको स्तोत्र स्वीकार गर। हामी उत्तम स्तुति गर्दै बुद्धिमान् र धनी हुने आशा गर्छौं। राम्रो वस्त्र र गतिलो रथ निर्माण गरेझैं हामी स्तोत्र रचना गर्दछौं।

[सूक्त - ३०]

ऋषि – बभ्रु आत्रेय। देवता – इन्द्र ऋणञ्चय। छन्द – त्रिष्टुप्।

क्व१स्य वीरः को अपश्यदिन्द्रं सुखरथमीयमानं हरिभ्याम्।
यो राया वज्री सुतसोममिच्छन्तदोको गन्ता पुरुहूत ऊती ॥१॥

जताततैबाट बोलाइने इन्द्रदेव वज्र धारण गर्छन् र धन तथा संरक्षण साधनले युक्त छन्। उनी पेलेर तयार गरेको सोमरसको इच्छा गर्दै यजमानका घर जान्छन्। त्यस्ता पराक्रमी इन्द्रदेव कहाँ छन्? दुई अश्वले सजिएको सुखद रथमा हिंड्ने गरेका इन्द्रदेवलाई कसले देखेको छ ?

अवाचचक्षं पदमस्य सस्वरुग्रं निधातुरन्वायमिच्छन्।
अपृच्छमन्याँ उत ते म आहुरिन्द्रं नरो बुबुधाना अशेम ॥२॥

हामीले इन्द्रदेवका गोप्य र उग्र स्थान देखेका छौं। दर्शनको आशाले हामी इन्द्रदेवका आश्रयस्थलमा गयौं। हामीले अरूलाई पनि सोध्यौं, त्यसपछि उनीहरूले उत्तम स्थानको आशा गर्ने मानिसले मात्रै इन्द्रदेवलाई भेट्न सक्छन् भने।

प्र नु वयं सुते या ते कृतानीन्द्र ब्रवाम यानि नो जुजोषः।
वेददविद्वाञ्छृणवच्च विद्वान्वहतेऽयं मघवा सर्वसेनः ॥३॥

हे इन्द्रदेव ! तिमीले गरेका कार्यको बयान हामी सोमयज्ञ हुने ठाउँमा गर्नेछौं। तिमीले हाम्रा निम्ति प्रयोग गरेको कान सबैले जानून्। जान्ने साधकले नजान्नेलाई सुनाऊन्। अनेकौं सेना भएका ऐश्वर्यशाली इन्द्रदेव अश्वमा चढेर जान्ने र सुन्नेहरूतिर जाऊन्।

स्थिरं मनश्चकृषे जात इन्द्र वेषीदेको युधये भूयसश्चित्।
अश्मानं चिच्छवसा दिद्युतो वि विदो गवामूर्वमुस्रियाणाम् ॥४॥

हे इन्द्रदेव ! प्रकट हुनेबित्तिकै शत्रुविजयी हुनका लागि तिमीले सङ्कल्प गर्‍यौ। युद्धमा एक्लै तिमीले अनेकौं शत्रु नष्ट गर्‍यौ र बलियो पर्वत भत्काएर त्यसमा थुनिएको दुधालु गाईको बथान मुक्त गरायौ।

परो यत्त्वं परम आजनिष्ठाः परावति श्रुत्यं नाम बिभ्रत्।
अतश्चिदिन्द्रादभयन्त देवा विश्वा अपो अजयद्दासपत्नीः ॥५॥

हे इन्द्रदेव ! तिमी श्रेष्ठतमहरूमा प्रमुख हौ। प्रकट भएर तिमीले आफ्नो नाम प्रसिद्ध गरेपछि देवताहरू डराए। वृत्रले अधिकारमा राखेको जल इन्द्रले जिते।

तुभ्येदेते मरुतः सुशेवा अर्चन्त्यर्कं सुन्वन्त्यन्धः।
अहिमोहानमप आशयानं प्र मायाभिर्मायिनं सक्षदिन्द्रः ॥६॥

हे इन्द्रदेव ! उत्तम सेवा गर्ने मरुत्हरू स्तोत्रले तिम्रो सेवाअर्चना गर्दै सोम अर्पण गर्छन्। जल थुनेर देवताहरूलाई सताउने मायावी अहिलाई इन्द्रदेवले नष्ट गराए।

वि षू मृधो जनुषा दानमिन्वन्नहन्गवा मघवन्त्सञ्चकानः।
अत्रा दासस्य नमुचेः शिरो यदवर्तयो मनवे गातुमिच्छन् ॥७॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! तिमी सबैबाट प्रशंसित हुन्छौ। तिमीले जन्मँदैखेरि दान नामको असुर मारेका थियौ र अन्य हिंसक शत्रु पनि मार्‍यौ। हे इन्द्रदेव ! यस युद्धमा मनुका लागि मार्ग बनाइदिन नमुचि नामका दस्युको शिर तिमीले काटेका थियौ।

युजं हि मामकृथा आदिदिन्द्र शिरो दासस्य नमुचेर्मथायन्।
अश्मानं चित्स्वर्यं१ वर्तमानं प्र चक्रियेव रोदसी मरुद्भ्यः ॥८॥

हे इन्द्रदेव ! मेघजस्तै गर्जने नमुचि दस्युको शिर तिमीले टुक्राटुक्रा पारेर हामीलाई मित्र बनायौ। मरुत्हरूका सहायताले तिमीले आकाश र पृथिवीलाई चक्रझैं घुम्ने बनायौ।

स्त्रियो हि दास आयुधानि चक्रे किं मा करन्नबला अस्य सेनाः।
अन्तर्ह्यख्यदुभे अस्य धेने अथोप प्रैद्युधये दस्युमिन्द्र ॥९॥

नमुचि नामका दस्युले आइमाईहरूलाई युद्धका साधन बनाएको थियो। त्यस्ता बलहीन सेनाले केही नगर्ला भन्ने सोचेर इन्द्रदेवले उसका दुई वटी मुख्य आइमाईलाई बन्दी बनाए र नमुचिसँग युद्ध गर्न तम्सिए।

समत्र गावोऽभितोऽनवन्तेहेह वत्सैर्वियुता यदासन्।
सं ता इन्द्रो असृजदस्य शाकैर्यदीं सोमासः सुषुता अमन्दन् ॥१०॥

असुरहरूका बलले नमुचिले बभ्रु ऋषिका गाई अपहरण गरेर बाछाबाट अलग्याएको थियो। गाईहरू जताततै भौंतारिंदै थिए। पेलेर तयार पारेका सोमरसले इन्द्रदेवलाई जोस्यायो र उनले आफ्ना सहायक मरुत्हरूद्वारा गाईलाई बाछासँग मिसाइदिए।

यदीं सोमा बभ्रुधूता अमन्दन्नरोरवीद्वृषभः सादनेषु।
पुरन्दरः पपिवाँ इन्द्रो अस्य पुनर्गवामददादुस्रियाणाम् ॥११॥

बभ्रुले पेलेका सोमले इन्द्रदेवलाई जब खुसी गराएपछि सङ्ग्राममा गएर बलवान् इन्द्रदेवले ठूलो गर्जना गरे। शत्रुको सहरलाई विध्वंस गर्ने इन्द्रदेवले सोमपान गरेर नै बभ्रुलाई दुधालु गाई फेरि उपलब्ध गराए।

भद्रमिदं रुशमा अग्ने अक्रन्गवां चत्वारि ददतः सहस्रा।
ऋणञ्चयस्य प्रयता मघानि प्रत्यग्रभीष्म नृतमस्य नृणाम् ॥१२॥

हे अग्निदेव ! ऋणञ्चय राजाका अधीनमा रहेका रुशमवासीले हामीलाई चार हजार गाई दिएर हितकारी काम गरे। मानिसको नेतृत्व गर्ने श्रेष्ठ ऋणञ्चय राजाले दिएको ऐश्वर्य पनि हामीले लियौं।

सुपेशसं माव सृजन्त्यस्तं गवां सहस्रै रुशमासो अग्ने।
तीव्रा इन्द्रममन्दुः सुतासोऽक्तोर्व्युष्टौ परितक्म्यायाः ॥१३॥

हे अग्निदेव ! रुशमवासीले हजारौं गाई र सजिएको घर हामीलाई दिए। पेलेर तयार पारेको कडा सोम रात बित्ने बेलामा दिएर हामीले इन्द्रदेवलाई खुसी पार्‍यौं।

औच्छत्सा रात्री परितक्म्या याँ ऋणञ्चये राजनि रुशमानाम्।
अत्यो न वाजी रघुरज्यमानो बभ्रुश्चत्वार्यसनत्सहस्रा ॥१४॥

रुशमवासीहरूका राजा ऋणञ्चयसित जाँदा अँधेरी रात थियो। त्यो रात बितेपछि बभ्रु ऋषिले निरन्तर गतिमान् अश्वजस्ता द्रुतगामी चार हजार गाई फेला पारे।

चतुःसहस्रं गव्यस्य पश्वः प्रत्यग्रभीष्म रुशमेष्वग्ने।
घर्मश्चित्तप्तः प्रवृजे य आसीदयस्मयस्तम्वादाम विप्राः ॥१५॥

हे अग्निदेव ! हामी मेधावी छौं। हामीले रुशमवासीसित गाईरूपी चार हजार पशु प्राप्त गरेको छौं र यज्ञमा पशुको दुध दुहुनका लागि अत्यधिक पोलेर शुद्ध पारिएका सुनको कलश पनि प्राप्त गर्‍यौं।

[सूक्त - ३१]

ऋषि - अवस्यु आत्रेय। देवता - इन्द्र उशना कुत्स। छन्द - त्रिष्टुप्।

इन्द्रो रथाय प्रवतं कृणोति यमध्यस्थान्मघवा वाजयन्तम्।
यूथेव पश्वो व्युनोति गोपा अरिष्टो याति प्रथमः सिषासन् ॥१॥

ऐश्वर्यशाली इन्द्रदेव जुन रथमा हुन्छन्, त्यसलाई उनी अति वेगका साथ हाँक्दछन्। गोठालाले आफ्ना पशु धपाएझैं उनी आफ्ना सेनालाई प्रेरित गर्दछन्। युद्धमा पनि आफू शत्रुबाट जोगिएर शत्रुको धन जित्दछन्।

आ प्र द्रव हरिवो मा वि वेनः पिशङ्गराते अभि नः सचस्व।
नहि त्वदिन्द्र वस्यो अन्यदस्त्यमेनांश्चिज्जनिवतश्चकर्थ ॥२॥

हरि नामका अश्वका अधिपति हे इन्द्रदेव ! हामीकहाँ तिमी चाँडै आऊ, निराश नपार। हे धनवान् इन्द्रदेव ! हामीले अर्पण गरेको पदार्थ स्वीकार गर। हे इन्द्रदेव ! तिमीभन्दा महान् अरू कोही पनि छैन। तिमी पत्नीविहीनहरूलाई पत्नी प्रदान गर्दछौ।

उद्यत्सहः सहस आजनिष्ट देदिष्ट इन्द्र इन्द्रियाणि विश्वा।
प्राचोदयत्सुदुघा वव्रे अन्तर्वि ज्योतिष संववृत्वत्तमोऽवः ॥३॥

सूर्योदयका तेजले उषाको तेज फैलिएपछि इन्द्रदेवले मानिसलाई सबै इन्द्रिय दिएर सक्रिय गराए। पर्वतले छेकिएर बसेका दुधालु गाई मुक्त गराए र सर्वत्र छोपेर बसेको अन्धकार आफ्ना तेजले हटाइदिए।

अनवस्ते रथमश्वाय तक्षन्त्वष्टा वज्रं पुरुहूत द्युमन्तम्।
ब्रह्माण इन्द्रं महयन्तो अर्कैरवर्धयन्नहये हन्तवा उ ॥४॥

धेरै तिरबाट बोलाइने गरेका हे इन्द्रदेव ! ऋभुहरूले तिम्रा रथ अश्व योजित गर्न मिल्ने बनाए। त्वष्टादेवले तिम्रा लागि तिखो वज्र बनाए। मन्त्रयुक्त स्तोत्रले यजन गर्नेहरूले तिमीलाई वृत्रवधका निम्ति स्तोत्रले हौस्याए।

वृष्णे यत्ते वृषणो अर्कमर्चानिन्द्र ग्रावाणो अदितिः सजोषाः।
अनश्वासो ये पवयोऽरथा इन्द्रेषिता अभ्यवर्तन्त दस्यून् ॥५॥

हे चाहिएको कुरो पूरा गरिदिने इन्द्रदेव ! बलवान् मरुतहरूले स्तोत्र गाएर तिम्रो स्तुति गरेका बेला बलिया ढुङ्गाहरू सोमरस पेल्नका लागि खटिएका थिए। अश्व र रथविहीन भाग्दै गरेका शत्रुलाई तिमीबाट प्रेरित भएर मरुतहरूले पराजित गरे।

प्र ते पूर्वाणि करणानि वोचं प्र नूतना मघवन्या चकर्थ।
शक्तीवो यद्विभरा रोदसी उभे जयन्नपो मनवे दानुचित्राः ॥६॥

हे ऐश्वर्यका धनी इन्द्रदेव ! आफ्ना बलले तिमीले जुन काम पूरा गरेका छौ, ती नयाँ वा पुराना कामको बयान हामी गर्दछौँ। हे इन्द्रदेव ! तिमीले मानिसका लागि अद्‌भुत र अनेकौँ खालका जल धारण गरेका छौ।

तदिन्नु ते करणं दस्म विप्राहिं यद्घ्नन्नोजो अत्रामिमीथाः।
शुष्णस्य चित्परि माया अगृभ्णाः प्रपित्वंयन्नप दस्यूँरसेधः ॥७॥

हे दर्शनीय र ज्ञानले सम्पन्न इन्द्रदेव ! वृत्रलाई मारेर बल प्रदर्शित गर्ने काम तिम्रै हो। तिमीले शुष्ण असुरको छल बुझेपछि उसलाई पक्रियौ। युद्धस्थलमा गएर असुरहरूको संहार गर्‍यौ।

त्वमपो यदवे तुर्वशायारमयः सुदुघाः पार इन्द्र।
उग्रमयातमवहो ह कुत्सं सं ह यद्वामुशनारन्त देवाः ॥८॥

हे आपद्‌बाट पार लगाउने इन्द्रदेव ! तिमीले यदु र तुर्वशका लागि वनस्पति बढाउन जल प्रवाहित गर्‍यौ। तिमीले कुत्समाथि आक्रमण गर्ने शुष्ण असुरबाट कुत्सको रक्षा गर्‍यौ। त्यस बेला उशना कवि र देवताहरूले तिम्रो स्तुति गाए।

इन्द्राकुत्सा वहमाना रथेना वामत्या अपि कर्णे वहन्तु।
निः षीमद्भ्यो धमथो निः षधस्थान्मघोनो हृदो वरथस्तमांसि ॥९॥

हे इन्द्रदेव ! हे कुत्स ! तिमीहरू दुवै एउटै रथमा बसेर द्रुतगामी अश्वद्वारा यजमानका समीप आओ। शुष्ण असुरलाई जलरूपी उसको आश्रयबाट निकालेर मारेका छौ। तिमीहरूले सबै यजमानका मनबाट अज्ञानरूपी अन्धकार हटाइदियौ।

वातस्य युक्तान्त्सुयुजश्चिदश्वान्कविश्चिदेषो अजगन्नवस्युः।
विश्वे ते अत्र मरुतः सखाय इन्द्र ब्रह्माणि तविषीमवर्धन् ॥१०॥

हे इन्द्रदेव ! ज्ञानसम्पन्न अवस्युले वायुजस्तै वेगवान् र रथमा सजिलै नारिने अश्व प्राप्त गरे। हे इन्द्रदेव ! तिम्रा मित्ररूपी मरुतहरूका स्तोत्रले तिम्रो बल बढायो।

सूरश्चिद्रथं परितक्म्यायां पूर्वं करदुपरं जूजुवांसम्।
भरच्चक्रमेतशः सं रिणाति पुरो दधत्सनिष्यति क्रतुं नः ॥११॥

उहिले नै सूर्यसित एतशको युद्ध हुँदा इन्द्रदेवले सूर्यको अति वेगवान् रथ चल्नै नसक्ने बनाइदिए। त्यसपछि इन्द्रदेवले सूर्यदेवका रथको एउटा पाङ्ग्रो निकालेर त्यसैले शत्रुको संहार गरेका थिए। यस्ता इन्द्रदेव हाम्रा स्तोत्रले हौसिऊन् र हाम्रा यज्ञको उपभोग गरुन्।

आयं जना अभिचक्षे जगामेन्द्रः सखायं सुतसोममिच्छन्।
वन्दग्रावाव वेदिं भ्रियाते यस्य जीरमध्वर्यवश्चरन्ति ॥१२॥

हे यजमानहरू हो ! मित्रका रूपमा तिमीहरूलाई भेट्न तिमीहरूले पेलेर तयार पारेको सोम पान गर्ने इच्छा लागेर इन्द्रदेव यहाँ आएका छन्। अध्वर्युहरू शब्द गरिरहेका सोम पेल्ने ढुङ्गा जोडले चलाउँछन्। अनि पेलेर तयार पारेको सोम वेदीमा ल्याउँछन्।

ये चाकनन्त चाकनन्त नू ते मर्ता अमृत मो ते अंह आरन्।
वावन्धि यज्यूँरुत तेषु धेह्योजो जनेषु येषु ते स्याम ॥१३॥

हे अविनाशी इन्द्रदेव ! हामी मानिसहरू तिम्रा आश्रयमा सुखी छौँ र सुखी नै रहौँ। हामी कहिल्यै पनि अनिष्टमा नपरौँ। यजमानहरूको सेवा स्वीकार गर। हामी सबै मानिसहरू तिम्रै हौँ र हामीभित्र तिमी बल स्थापित गरिदेऊ।

[सूक्त - ३२]

ऋषि - गातु आत्रेय। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अदर्दरुत्समसृजो वि खानि त्वमर्णवान्बद्बधानाँ अरम्णाः।
महान्तमिन्द्र पर्वतं वि यद्वः सृजो वि धारा अव दानवं हन् ॥१॥

हे इन्द्रदेव ! तिमीले बादल फुटाएर जलका धारा प्रकट गर्न बाधाहरू पन्छायौ। समुद्रलाई अग्ला छाल र धेरै जलले प्रसन्न गरायौ। तिमीले नै राक्षसको संहार गर्‍यौ।

त्वमुत्साँ ऋतुभिर्बद्बधानाँ अरंह ऊधः पर्वतस्य वज्रिन्।
अहिं चिदुग्र प्रयुतं शयानं जघन्वाँ इन्द्र तविषीमधत्थाः ॥२॥

हे वज्रधारी इन्द्रदेव ! वर्षाकालमा पानी थुनिराख्ने मेघको बन्धन खोलेर मेघको बल नष्ट गराउँछौ। हे भयानक इन्द्रदेव ! तिमीले पानी थुनेर सुतेका वृत्रलाई मारेर आफ्नो बल प्रख्यात गरायौ।

त्यस्य चिन्महतो निर्मृगस्य वधर्जघान तविषीभिरिन्द्रः।
य एक इदप्रतिर्मन्यमान आदस्मादन्यो अजनिष्ट तव्यान् ॥३॥

केवल इन्द्रदेव नै अतुलनीय छन्। पृथ्वीमा चल्ने वृत्रका अस्त्रहरू उनले नष्ट गराए। त्यसै वृत्रबाट अर्को एउटा बलशाली असुर प्रकट भयो।

त्यं चिदेषां स्वधया मदन्तं मिहो नपातं सुवृधं तमोगाम्।
वृषप्रभर्मा दानवस्य भामं वज्रेण वज्री नि जघान शुष्णम् ॥४॥

मेघले वर्षाको पानी बोक्छ। मेघमाथि वज्र प्रहार गरेर इन्द्र पानी खसाउँन्। इन्द्रदेवले शुष्ण नामका असुरलाई त्यसै वज्रले हानेर मारिदिए। वृत्रासुरका क्रोधबाट शुष्ण उत्पन्न भएको थियो र उसले अन्धकार उत्पन्न गरेर संसार छोप्ने गर्दथ्यो। उसले मेघलाई छेकेर पानी खस्न दिँदैनथ्यो अनि प्राणीहरूको अन्न आफैँ खाइदिएर रमाउँथ्यो।

त्यं चिदस्य क्रतुभिर्निषत्तममर्मणो विददिदस्य मर्म।
यदीं सुक्षत्र प्रभृता मदस्य युयुत्सन्तं तमसि हर्म्ये धाः ॥५॥

हे इन्द्रदेव ! जसको भेद कसैले जान्न सकेको थिएन, त्यस वृत्रको गोप्य भेद तिमीले आफ्नै कर्मले जान्यौ। मनग्गे बल सम्पन्न हे इन्द्रदेव ! सोमपान गरेर खुसी भएपछि अन्धकारमा लुकेर युद्ध गर्न निहुँ खोज्ने वृत्रलाई तिमीले खोजेर निकाल्यौ।

त्यं चिदित्था कत्पयं शयानमसूर्ये तमसि वावृधानम्।
तं चिन्मन्दानो वृषभः सुतस्योच्चैरिन्द्रो अपगूर्या जघान ॥६॥

जलमा आनन्दले सुत्ने वृत्र गहिरो अन्धकारमा बलियो हुन्थ्यो। पेलेको सोम पिएपछि खुसी हुने अत्यन्त बलिया इन्द्रदेवले वज्र माथिसम्म उचालेर वृत्रलाई मारिदिए।

उद्यदिन्द्रो महते दानवाय वधर्यमिष्ट सहो अप्रतीतम्।
यदीं वज्रस्य प्रभृतौ ददाभ विश्वस्य जन्तोरधमं चकार ॥७॥

इन्द्रदेवले भीषण जिउको दानव मार्नका लागि अजेय वज्र उचाले र वृत्र दानवमाथि प्रचण्ड प्रहार गरे। त्यसलाई उनले सबै प्राणीको भन्दा तल्लो तहमा पुऱ्याइदिए।

त्यं चिदर्णं मधुपं शयानमसिन्वं वव्रं मह्याददुग्रः।
अपादमत्रं महता वधेन नि दुर्योण आवृणङ्मृध्रवाचम् ॥८॥

शत्रु विनाश गर्ने अत्यन्त वीर इन्द्रदेवले विशाल मेघ थुनेर सुत्ने र सबैलाई छोपेर राख्ने वृत्र नामका असुरलाई पक्रिए। पाउ र परिमाण नै नभएको तथा दुर्वचन मात्रै बोल्ने त्यस वृत्रलाई इन्द्रदेवले सङ्ग्राममा टुक्रटुक्रा पारे।

को अस्य शुष्मं तविषीं वरात एको धना भरते अप्रतीतः।
इमे चिदस्य ज्रयसो नु देवी इन्द्रस्यौजसो भियसा जिहाते ॥९॥

इन्द्रदेवका शोषक बललाई कसले रोक्न सक्ला र ? प्रतिद्वन्द्वीविनाका इन्द्रदेव एक्लै नै शत्रुको धन खोस्छन्। दीप्तिमती द्यावापृथिवी वेगवान् इन्द्रदेवका बलसित डराउँछन्।

न्यस्मै देवी स्वधितिर्जिहीत इन्द्राय गातुरुशतीव येमे।
सं यदोजो युवते विश्वमाभिरनु स्वधाव्ने क्षितयो नमन्त ॥१०॥

दीप्तिमान, स्वयं धारणशील आकाश इन्द्रदेवका लागि नम्र हुन्छ। रहर जागेका स्त्रीहरू पतिका लागि समर्पित भएझैं इन्द्रदेवका अगाडि पृथ्वी आत्मसमर्पित हुन्छ। इन्द्रदेवले आफ्नो सम्पूर्ण बल प्रजाका बीचमा स्थापित गरेपछि प्रजाहरू बलवान् इन्द्रदेवलाई नमस्कार गर्दछन्।

एकं नु त्वा सत्पतिं पाञ्चजन्यं जातं शृणोमि यशसं जनेषु।
तं मे जगृभ्र आशसो नविष्ठं दोषा वस्तोर्हवमानास इन्द्रम् ॥११॥

हे इन्द्रदेव ! तिमी सज्जनका पालक, पाँचै वर्गका मानिसका हितैषि र अत्यन्त यशस्वी हौ भन्ने कुरो हामीले सुनेका छौं। वरिष्ठतापूर्वक उत्पन्न हुने तिमी मात्रै हौ। दिनरात स्तुति गर्दै हवि प्रदान गर्ने विचार भएका हाम्रा सन्तानले अत्यन्त स्तुत्य इन्द्रदेवलाई प्राप्त गरुन्।

एवा हि त्वामृतुथा यातयन्तं मघा विप्रेभ्यो ददतं शृणोमि।
किं ते ब्रह्माणो गृहते सखायो ये त्वाया निदधुः काममिन्द्र ॥१२॥

हे इन्द्रदेव ! तिमी वेलावखत प्राणीका लागि प्रेरक हुन्छौ र ज्ञानीलाई धन दिने गर्दछौ भन्ने हामीले सुनेका छौं। हे इन्द्रदेव ! जुन स्तोताले आफ्ना रहर तिमीमा स्थापित गर्दछन्, तिम्रा ती ज्ञानी मित्रहरूले तिमीबाट के पाउँछन् ?

[सूक्त – ३३]

**ऋषि** – संवरण प्राजापत्य। **देवता** – इन्द्र। **छन्द** – त्रिष्टुप्।

महि महे तवसे दीध्ये नॄनिन्द्रायेत्था तवसे अतव्यान्।
यो अस्मै सुमतिं वाजसातौ स्तुतो जने समर्यश्चिकेत ॥१॥

युद्धमा वीर पुरुषहरूले युक्त भएपछि इन्द्रदेव प्रकृष्ट पराक्रमी देखिन्छन् र आफ्ना उत्तम बुद्धिले सबै मानिसमाथि प्रभाव जमाउँदै स्तुत्य हुन्छन्। हामी निर्धा स्तोताहरू मानिसलाई बलसम्पन्न बनाउनका लागि बलशाली इन्द्रदेवको मनग्गे स्तुति गर्दछौं।

स त्वं न इन्द्र धियसानोअर्कैर्हरीणां वृषन्योक्त्रमश्रेः।
या इत्था मघवन्ननु जोषं वक्षो अभि प्रार्यः सक्षि जनान् ॥२॥

हे चाहिएको कुरो पूरा गराउने इन्द्रदेव ! तिमी हाम्रा स्तुतिमाथि ध्यान दिँदै प्रेमका साथ रथमा नारिएका अश्वको लगाम हातमा लेऊ। हे ऐश्वर्यवान् इन्द्रदेव ! हाम्रा शत्रुलाई पनि तिमी पराजित गरिदेऊ।

न ते त इन्द्राभ्य१स्मदृष्वायुक्तासो अब्रह्मता यदसन्।
तिष्ठा रथमधि तं वज्रहस्ता रश्मिं देव यमसे स्वश्वः ॥३॥

हे तेजस्वी इन्द्रदेव ! जुन मानिसहरू तिम्रा भक्तभन्दा भिन्न छन् र तिमीसित रहँदैनन्, जो ब्रह्मकर्मबाट रहित छन्, ती तिम्रा भक्त हुन सक्दैनन्। हे वज्रधारी इन्द्रदेव ! तिमी हाम्रा यज्ञमा दीप्तिमान् र उत्तम अश्व नारिएको रथ आफैंले हाँक्दै लिएर आऊ।

पुरू यत्त इन्द्र सन्त्युक्था गवे चकर्थोर्वरासु युध्यन्।
ततक्षे सूर्याय चिदोकसि स्वे वृष समत्सु दासस्य नाम चित् ॥४॥

हे इन्द्रदेव ! तिम्रा उल्लेख्य स्तोत्र अनेकौं छन्। जल अवरोधकलाई विनाश गरेर तिमीले उब्जाउ भूमिमा जलको वर्षा गर्ने मार्ग बनाएका छौ। हे बलवान् इन्द्रदेव ! तिमीले युद्धमा नमुचि दासको नामनिसान मेटाइदियौ।

वयं ते त इन्द्र ये च नरः शर्धो जज्ञाना याताश्च रथाः।
आस्माज्जगम्यादहिशुष्म सत्वा भगो न हव्यः प्रभृथेषु चारुः ॥५॥

हे इन्द्रदेव ! हामी सबै ऋत्विक् र यजमानहरू तिम्रै हौं। यज्ञद्वारा तिम्रो बल बढाइदिन्छौं र आहुति प्रदान गर्नका लागि तिम्रा अगाडि उपस्थित हुन्छौं। हे इन्द्रदेव ! तिम्रो शक्ति सर्वत्र सञ्चरित छ। हामीलाई युद्धमा भगरूपी सेवक तिम्रा कृपाले प्राप्त होस्।

पपृक्षेण्यमिन्द्र त्वे ह्योजो नृम्णानि च नृतमानोअमर्तः।
स न एनीं वसवानो रयिं दाः प्रार्यः स्तुषे तुविमघस्य दानम् ॥६॥

तिम्रो सम्पूर्ण बल अत्यन्त पूजनीय छ। तिमी मानिसहरूमा व्याप्त भएर पनि अविनाशी छौ। तिमी आफ्ना सामर्थ्यले संसारका आश्रयदाता हौ। हामीलाई उज्वल वर्णको धन प्रदान गर। तिमी अत्यन्त धनसम्पन्न, महान् दाता हौ र हामी दानको उचित स्तुति गर्छौं।

एवा न इन्द्रोतिभिरव पाहि गृणतः शूर कारून्।
उत त्वचं ददतो वाजसातौ पिप्रीहि मध्वः सुषुतस्य चारोः ॥७॥

हे शूरवीर इन्द्रदेव ! हामी यजमानहरू तिम्रो स्तुति र यजन गर्दछौं। आफ्ना रक्षण सामर्थ्यले तिमी हाम्रो रक्षा गर। सङ्ग्रामको कवचले जस्तै तिमी हाम्रो रक्षा गर। हामीले राम्ररी पेलेर तयार गरेको मिठो सोमरस पिएर तिमी सन्तुष्ट होऊ।

उत त्ये मा पौरुकुत्स्यस्य सूरेस्त्रसदस्योर्हिरणिनो रराणाः।
वहन्तु मा दश श्येतासो अस्य गैरिक्षितस्य क्रतुभिर्नु सश्चे ॥८॥

गिरिक्षित गोत्रमा उत्पन्न भएका पुरुकुत्सका विद्वान् पुत्र त्रसदस्यु स्वर्ण सम्पदाले सम्पन्न छन्। उनले दिएका दस वटा सेता वर्णका अश्वले हामीलाई वहन गरुन्। हामी पनि असल कर्तव्य निर्वाह गरिरहौं।

उत त्ये मा मारुताश्वस्य शोणाः क्रत्वामघासो विदथस्य रातौ।
सहस्रा मे च्यवतानो ददान आनूकमर्यो वपुषे नार्चत् ॥९॥

मरुताश्वका पुत्र विदथका यज्ञमा हामीलाई उनले रातो वर्णका द्रुतगामी अश्व प्रदान गरे र हजारौं किसिमका धन दिएर हाम्रो शरीर असल गहनाले सजाए।

उत त्ये मा ध्वन्यस्य जुष्टा लक्ष्मण्यस्य सुरुचो यतानाः।
मह्ना रायः संवरणस्य ऋषेर्व्रजं न गावः प्रयता अपि ग्मन् ॥१०॥

लक्ष्मणका पुत्र ध्वन्यले हामीलाई दीप्तियुक्त र पराक्रमी अश्व प्रदान गरे। हामीले त्यो स्वीकार गर्‍यौं। गाई चरनतिर गएझैं त्यो प्रशस्त धन संवरण ऋषिकहाँ गएको छ।

[सूक्त - ३४]

ऋषि - संवरण प्राजापत्य। देवता - इन्द्र। छन्द - जगती त्रिष्टुप्।

अजातशत्रुमजरा स्वर्वत्यनु स्वधामिता दस्ममीयते।
सुनोतन पचत ब्रह्मवाहसे पुरुष्टुताय प्रतरं दधातन ॥१॥

जसका शत्रु जन्मिएकै छैनन् त्यस्ता दर्शनीय इन्द्रदेवलाई नखिइने, सुखदायी र असीमित हविष्यान्न प्राप्त हुन्छ। उनै इन्द्रदेव धेरै तिरबाट स्तुति गरिने र स्तोत्र धारण गर्दछन्। हे ऋत्विक्हरू हो ! उनै इन्द्रदेवका लागि पुरोडाश पकाओ र उत्तम यज्ञ आदि कर्म सम्पादित गर।

आ यः सोमेन जठरमपिप्रतामन्दत मघवा मध्वो अन्धसः।
यदीं मृगाय हन्तवे महावधः सहस्रभृष्टिमुशना वधं यमत् ॥२॥

इन्द्रदेवले सोमरसले पेट भरे र मधुर हविष्यान्नका हर्षले युक्त भएर मृग नामका असुर मार्ने विचार गरे। ती महावधी इन्द्रदेवले सहस्र धार भएको वज्र हातमा उचाले।

यो अस्मै घ्रंस उत वा य ऊधनि सोमं सुनोति भवति द्युमाँ अह।
अपाप शक्रस्ततनुष्टिमूहति तनूशुभ्रं मघवा यः कवासखः ॥३॥

इन्द्रदेवका लागि दिनरात सोम पेलेर तयार गर्ने यजमानहरू दीप्तिमान् हुन्छन्। जसले देखावटी यज्ञ गरेर सन्तानको कामना गर्दछन्, जो आफ्नो शरीर सजाउने, देखासिकी गर्ने र नराम्रो आचरण गर्नेका मित्र हुन्छन्, त्यस्तालाई इन्द्रदेवले छोडिदिन्छन्।

यस्यावधीत्पितरं यस्य मातरं यस्य शक्रो भ्रातरं नात ईषते।
वेतीद्वस्य प्रयता यतङ्करो न किल्बिषादीषते वस्व आकरः ॥४॥

जसले यजमानका पितामाता वा दाजुभाइ आदि आफन्तको वध गर्दछ, सामर्थ्यवान् इन्द्रदेव त्यस दुष्टका नजिकमा जाँदैनन्। उसले दिएको हविष्यान्न स्वीकार गर्दैनन्। ती धनका अधीश्वर र सर्वनियामक इन्द्रदेव पापदेखि टाढै रहन्छन्।

न पञ्चभिर्दशभिर्वष्ट्यारभं नासुन्वता सचते पुष्यता चन।
जिनाति वेदमुया हन्ति वा धुनिरा देवयुं भजति गोमति व्रजे ॥५॥

युद्धमा इन्द्रदेव पाँच या दस मित्रको मात्रै सहायता गर्ने विचार गर्दैनन्। जसले सोमयज्ञ गर्दैन र आफन्तको हेरचाह गर्दैन इन्द्रदेव त्यस्ताको सङ्गत गर्दैनन्। शत्रु थर्काउने इन्द्रदेव यज्ञ नगर्नेहरूलाई जितेर मारिदिन्छन् र याज्ञिकलाई गाईसहित घर दिन्छन्।

वित्वक्षणः समृतौ चक्रमासजोऽसुन्वतो विषुणः सुन्वतो वृधः।
इन्द्रो विश्वस्य दमिता विभीषणो यथावशं नयति दासमार्यः ॥६॥

सङ्ग्राममा शत्रुको शक्ति क्षीण गराउने इन्द्रदेव रथको पाङ्ग्रो तेजसँग चलाउँछन्। तिनी सोमयाग नगर्नेहरूबाट टाढा रहन्छन् र सोमयाग गर्नेहरूलाई बलियो बनाउँछन्। सम्पूर्ण विश्वलाई नियमित गराउने, शत्रुका लागि भयङ्कर इन्द्रदेवले नमुचिदासलाई आफ्ना वशमा गर्दछन्।

समीं पणेरजति भोजनं मुषे वि दाशुषे भजति सूनरं वसु।
दुर्गे चन ध्रियते विश्व आ पुरु जनो यो अस्य तविषीमचुक्रुधत् ॥७॥

इन्द्रदेव कन्जुस व्यापारीको धन खोसेर हवि प्रदान गर्ने यजमानलाई दिँदै भलो गर्दछन्। इन्द्रदेवका बलको खिसी गर्नेलाई आपद्का किल्लाभित्र इन्द्रदेवले थुनिदिन्छन्।

सं यज्जनौ सुधनौ विश्वशर्धसाववेदिन्द्रो मघवा गोषु शुभ्रिषु।
युजं ह्य१न्यमकृत प्रवेपन्युदीं गव्यं सृजते सत्वभिर्धुनिः ॥८॥

निकै धनी र ज्यादै बलिया दुई मानिस सेता गाईका लागि आपसमा लडाइँ गर्दै छन् भने ऐश्वर्यशाली इन्द्रदेव तिनीहरूमध्ये याज्ञिकलाई नै सहयोग गर्दछन्। आफ्ना बलले शत्रुलाई कम्पित गराउने इन्द्रदेव त्यस्ता याज्ञिकलाई गाईको बथान प्रदान गर्दछन्।

सहस्रसामाग्निवेशिं गृणीषे शत्रिमग्न उपमां केतुमर्यः।
तस्मा आपः संयतः पीपयन्त तस्मिन्क्षत्रममवत्त्वेषमस्तु ॥९॥

हे तेजस्वी गुणले सम्पन्न इन्द्रदेव ! हामी हजारौँ किसिमका धनदाता, अग्निवेशीका पुत्र शत्रि ऋषिको स्तुति गर्दछौँ। उनी ध्वजाजस्तै, शिरका मणिजस्ता र उचित उदाहरण दिन योग्य छन्। थुनिएको पानीको प्रवाहले उनलाई उचित रूपले सन्तुष्ट गरोस्। उनीसित बलयुक्त र तेजयुक्त धन होस्।

[सूक्त - ३५]

**ऋषि** - प्रभूवसु आङ्गिरस। **देवता** - इन्द्र। **छन्द** - अनुष्टुप् पङ्क्ति।

यस्ते साधिष्ठोऽवस इन्द्र क्रतुष्टमा भर।
अस्मभ्यं चर्षणीसहं सस्निं वाजेषु दुष्टरम् ॥१॥

हे इन्द्रदेव ! तिम्रा प्रभावकारी र विशिष्ट कर्महरूलाई हाम्रो संरक्षणमा प्रेरित गर। तिम्रा कर्महरू शत्रु जित्ने, अति शुद्ध र कठिन सङ्ग्रामबाट पार लगाउने खालका छन्।

यदिन्द्र ते चतस्रो यच्छूर सन्ति तिस्रः।
यद्वा पञ्च क्षितीनामवस्तत्सु न आ भर ॥२॥

हे इन्द्रदेव ! तिमीसित चार वर्णको रक्षा गर्ने साधन छन्, तीनै लोकको रक्षा गर्ने साधन छन् अथवा पाँचै वर्गका मानिसहरूको रक्षा गर्ने साधनहरू छन्। हामीलाई सबै रक्षा साधनले पूर्ण गराऊ।

आ तेऽवो वरेण्यं वृषन्तमस्य हूमहे। वृषजूतिर्हि जज्ञिष आभूभिरिन्द्र तुर्वणिः।
हे इन्द्रदेव ! तिमी खोजेको जस्तो फल वर्षा गराउँदै शत्रुलाई तुरुन्त संहार गर्दछौ। हामी तिम्रा सबै रक्षा साधनको कामना गर्दछौं। तिमी सर्वत्र विद्यमान र सहायक मरुत्हरूको साथ हाम्रा लागि असल दाता सिद्ध होऊ।

वृषा ह्यसि राधसे जज्ञिषे वृष्णि ते शवः।
स्वक्षत्रं ते धृषन्मनः सत्राहमिन्द्र पौंस्यम् ॥४॥
हे इन्द्रदेव ! तिमी खोजेको कुरो पूरा गर्ने हौ। यजमानलाई धनऐश्वर्य दिनका लागि नै तिमी उत्पन्न भएका हौ। तिम्रो बल हितको वर्षा गराउने खालको छ। तिम्रो मन कडा परिश्रम गर्ने शक्तिले पूर्ण छ। तिम्रो बल शत्रुलाई नियन्त्रण गर्ने खालको छ। तिम्रा पुरुषार्थले शत्रुको विनाश गर्छ।

त्वं तमिन्द्र मर्त्यममित्रयन्तमद्रिवः। सर्वरथा शतक्रतो नि याहि शवसस्पते ।५।
हे वज्रधारी इन्द्रदेव ! तिमी सयौं यज्ञ आदि कर्म पूरा गर्दछौ। तिम्रो रथ निर्बाध गतिमा जतासुकै जान्छ। जसले शत्रुको व्यवहार गर्दछ, तिमी त्यसैका विरोधी हौ।

त्वामिद्वृत्रहन्तम जनासो वृक्तबर्हिषः। उग्रं पूर्वीषु पूर्व्यं हवन्ते वाजसातये ।६।
हे वृत्रहन्ता इन्द्रदेव ! यज्ञमा कुशको आसन बिछाएर अभिवादन गर्ने मानिसहरू जीवनसङ्ग्राममा तिमीलाई आह्वान गर्दछन्। तिमी उग्र, वीरका रूपमा सम्पूर्ण प्रजाका लागि सधैं परिचित छौ।

अस्माकमिन्द्र दुष्टरं पुरोयावानमाजिषु।
सयावानं धनेधने वाजयन्तमवा रथम् ॥७॥
हे इन्द्रदेव ! तिमी हाम्रा रथको रक्षा गर। यस रथले युद्धमा ऐश्वर्यको कामना गर्दछ। यो रथ अनुचरहरूका साथ अगाडि बढ्दा कसैले जित्न नसक्ने खालको छ।

अस्माकमिन्द्रेहिनो रथमवा पुरन्ध्या।
वयं शविष्ठ वार्यं दिवि श्रवो दधीमहि दिवि स्तोमं मनामहे ॥८॥
हे इन्द्रदेव ! तिमी हाम्रा नजिकै आऊ। आफ्नो उत्कृष्ट बुद्धिले हाम्रो रक्षा गर। तिमी अत्यन्त बलशाली छौ। तिम्रा निम्ति हामी ग्रहण गर्न योग्य र दीप्तिमान अन्न हविद्वारा स्थापित गर्दछौं र दिव्य स्तुति उच्चारण गर्दछौं।

[सूक्त - ३६]
ऋषि - प्रभूवसु आङ्गिरस। देवता - इन्द्र। छन्द - त्रिष्टुप् जगती।
स आ गमदिन्द्रो यो वसूनां चिकेतद्दातुं दामनो रयीणाम्।
धन्वचरो न वंसगस्तृषाणश्चकमानः पिबतु दुग्धमंशुम् ॥१॥
इन्द्रदेव धन दिन खोज्छन् र उनी धनदाताका रूपमा अनुपम छन्। उनी हाम्रा यज्ञमा आऊन्। धनुर्धारी वीरले सिकारको सामना गरेझैं तिर्खाएर सोम खोज्ने इन्द्रदेवले दुध मिसाएको सोमरस पान गरुन्।

आ ते हनू हरिवः शूर शिप्रे रुहत्सोमो न पर्वतस्य पृष्ठे।
अनुत्वा राजन्नर्वतो न हिन्वन् गीर्भिर्मदेम पुरुहूत विश्वे ॥२॥
हे अश्वयुक्त शूर इन्द्रदेव ! पर्वतका माथिल्ला भागमा सोमवल्ली रहेझैं तयारी सोम तिम्रा सुन्दर ओठमा चढोस्। धेरै तिरबाट बोलाइने, दीप्तिमान् हे इन्द्रदेव ! घाँस खाएर अश्व सन्तुष्ट भएझैं हाम्रो स्तुति पाएर तिमी सन्तुष्ट होऊ र हामी पनि खुसी होऔं।

चक्रं न वृत्तं पुरुहूत वेपते मनोभिया मे अमतेरिदद्रिवः।
रथादधि त्वा जरिता सदावृध कुविन्नु स्तोषन्मघवन्पुरूवसुः ॥३॥
धेरै तिरबाट प्रशंसा पाउने, वज्र लिएका हे इन्द्रदेव ! घुमिरहेको गोलो चक्र काँपेझैं हाम्रो बुद्धिहीन मन भयले काँप्दछ। सधैं उन्नति गर्ने हे इन्द्रदेव ! तिमी असङ्ख्य धनका अधिपति र अत्यन्त ऐश्वर्यशाली छौ। हामी स्तोताहरू बारम्बार तिम्रो स्तुति गर्दछौं। तिमी धनयुक्त रथमा चढेर हामीकहाँ आऊ।

एष ग्रावेव जरिता त इन्द्रेयर्ति वाचं बृहदाशुषाणः।
प्र सव्येन मघवन्यंसि रायः प्र दक्षिणिद्धरिवो मा वि वेनः ॥४॥
हामी स्तोताहरू सोम पेल्ने ढुङ्गाको जस्तै शब्द निकालेर स्तुति गर्दछौं। हे ऐश्वर्यशाली इन्द्रदेव !

तिमी विपुल धनसम्पन्न छौ। तिमी बायाँ र दायाँ हातले धन दान गर्दछौ। हे दुई अश्व भएका इन्द्रदेव ! तिमी हाम्रो कामना विफल नबनाऊ।

**वृषा त्वा वृषणं वर्धतु द्यौर्वृषा वृषभ्यां वहसे हरिभ्याम्।**
**स नो वृषा वृषरथः सुशिप्र वृषक्रतो वृषा वज्रिन्भरे धाः ॥५॥**

हे बलशाली इन्द्रदेव ! बलसंयुक्त आकाशले तिम्रो बल बढाओस्। तिमी बलसम्पन्न छौ र अति बलवान् अश्वले बोकिन्छौ। सुन्दर मुकुट र वज्र धारण गर्ने हे इन्द्रदेव ! तिमी अति नै बलसम्पन्न कर्म गर्दछौ। तिमी अत्यन्त बलशाली रथमा चढेका छौ, सङ्ग्राममा राम्ररी हाम्रो रक्षा गर।

**यो रोहितौ वाजिनौ वाजिनीवान्त्रिभिः शतैः सचमानावदिष्ट।**
**यूने समस्मै क्षितयो नमन्तां श्रुतरथाय मरुतो दुवोया ॥६॥**

इन्द्रदेवका सहायक हे मरुत्हरू हो ! अन्नका धनी श्रुतरथ राजाले समान गति भएका र रातो वर्णका दुई अश्व र तीन सय गाई हामीलाई प्रदान गरे। तरुण श्रुतरथलाई उनका सबै प्रजाहरू सेवाभावले युक्त भएर नमस्कार गर्दछन्।

[सूक्त - ३७]

**ऋषि** - अत्रि भौम। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

**सं भानुना यतते सूर्यस्याजुह्वानो घृतपृष्ठः स्वञ्चाः।**
**स्मा अमृध्रा उषसो व्युच्छान्य इन्द्राय सुनवामेत्याह ॥१॥**

उत्तम तरिकाले बोलाइएका र घिउको आहुतिले दीप्तिमान् अग्निका ज्वालाहरू सूर्यका रश्मिसित मिसिन्छन्। त्यस बेला जुन यजमान इन्द्रदेवले यो सोम सेवन गर भन्दछन्, तिनका लागि उषा अत्यन्त सुखदायी भएर प्रकट हुन्छ।

**समिद्धाग्निर्वनवत्स्तीर्णबर्हिर्युक्तग्रावा सुतसोमो जराते।**
**ग्रावाणो यस्येषिरं वदन्त्ययदध्वर्युर्हविषाव सिन्धुम् ॥२॥**

अध्वर्युहरू अग्नि प्रज्वलित गरेर, आसन ओछ्याउँदै यजन कार्यमा लाग्छन्। उनीहरू सोम पेल्ने ढुङ्गासँगै बसेर स्तुति गर्दा ढुङ्गाको भन्दा ठूलो शब्द निकाल्छन्। उनै अध्वर्यु सोमयुक्त हविष्यान्न लिएर नदीका किनारमा यजन कार्य सम्पन्न गर्दछन्।

**वधूरियं पतिमिच्छन्त्येति य ईं वहाते महिषीमिषिराम्।**
**आस्य श्रवस्याद्रथ आ च घोषात्पुरू सहस्रा परि वर्तयाते ॥३॥**

असल विचार लिएर जसरी पत्नीले यज्ञमा पतिलाई अनुसरण गर्दछन्, उसै गरी इन्द्रदेव पनि आफ्नो अनुसरण गर्ने रानीहरूलाई यज्ञमा लिएर आउँछन्। अकुत ऐश्वर्यले सम्पन्न इन्द्रदेवका रथको कीर्ति चारै दिशामा फैलिएर गुन्जियोस्। उनै इन्द्रदेव हजारौं विपुल धन चारै तिरबाट हामीकहाँ ल्याऊन्।

**न स राजा व्यथते यस्मिन्निन्द्रस्तीव्रं सोमं पिबति गोसखायम्।**
**आ सत्वनैरजति हन्ति वृत्रं क्षेति क्षितीः सुभगो ना मपुष्यन् ॥४॥**

जसका राज्यमा इन्द्रदेव सधैं गाईको दुध मिसिएको सोमरस पान गर्दछन्, त्यस्ता राजाले कहिल्यै पनि दुःख पाउँदैनन्। उनी आफ्ना असल सेवकसँगै घुम्दछन् र शत्रुलाई मार्दछन्। प्रजालाई सुरक्षित राख्दै ती राजाले नाम र यश धेरै कमाउँछन्।

**पुष्यात्क्षेमे अभि योगे भवात्युभे वृतौ संयती सं जयाति।**
**प्रियः सूर्ये प्रियो अग्ना भवाति य इन्द्राय सुतसोमो ददाशत् ॥५॥**

पेलेर शुद्ध पारेको सोम इन्द्रदेवलाई प्रदान गर्दछन्, तिनले आफ्ना सन्तान राम्ररी पाल्दै कमाएका धनको रक्षा गर्दछन्। अरूले नकमाएको धन तिनले कमाउछन्। यस्तो व्यक्ति नै जीवन सङ्ग्राममा उभिँदा विजयी हुन्छ। सूर्यदेव र अग्निदेवका लागि त्यही व्यक्ति प्रिय हुन्छ।

[सूक्त - ३८]

**ऋषि** - अत्रि भौम। **देवता** - इन्द्र। **छन्द** - अनुष्टुप्।

**उरोष्ट इन्द्र राधसो विभ्वी रातिः शतक्रतो।**
**अधा नो विश्वचर्षणे द्युम्ना सुक्षत्र मंहय ॥१॥**

सर्वज्ञ, श्रेष्ठ दानी, सय अश्वमेध सम्पन्न गरेका हे इन्द्रदेव ! तिमी धन प्रदान गरेर महिमाशाली होऊ र हामीलाई पनि ऐश्वर्यले सम्पन्न बनाऊ।

वृषा त्वा वृषणं हुवे वज्रिञ्चित्राभिरूतिभिः। वृषन्निन्द्र वृषभिर्वृत्रहन्तम् ॥३॥

हे वज्र लिने इन्द्रदेव ! तिमी सोम सेचन गर्ने र वर्षा गराउने हौ। तिम्रा संरक्षण पाइयोस् भनेर हामी गुहार्दछौं। तिमी वर्षा गराउने मरुत्हरूसितै सोमपान गर।

ऋजीषी वज्री वृषभस्तुराषाट्छुष्मी राजा वृत्रहा सोमपावा।
युक्त्वा हरिभ्यामुप यासदर्वाङ्माध्यन्दिने सवने मत्सदिन्द्रः ॥४॥

इन्द्रदेव सोम धारण गर्ने, वज्र धारण गर्ने, चाहिएको कुरो पूरा गरिदिने, शत्रुको विनाश गर्ने, शत्रुको बल सिध्याउने, सबैमाथि अधिकार गर्ने, वृत्रको वध गर्ने र सोमपान गर्ने हुन्। यस्ता इन्द्रदेव आफ्ना अश्व रथमा जोतेर हामीकहाँ आऊन् र मध्य दिनका सवनमा सोमपान गरेर खुसी होऊन्।

यत्त्वा सूर्य स्वर्भानुस्तमसाविध्यदासुरः।
अक्षेत्रविद्यथा मुग्धो भुवनान्यदीधयुः ॥५॥

हे सूर्यदेव ! तिमीलाई स्वर्भानु अर्थात् राहुले अन्धकारमा छोपेको थियो। त्यस बेला आफ्नो ठाउँ नचिनेको मानिस अँध्यारामा अल्मलिएझैं सारा संसार अन्धकारमा रुमलिएको थियो।

स्वर्भानोरध यदिन्द्र माया अवो दिवो वर्तमाना अवाहन्।
गूळ्हं सूर्यं तमसापव्रतेन तुरीयेण ब्रह्मणाविन्ददत्रिः ॥६॥

हे इन्द्रदेव ! आकाशमुनि रहेका स्वर्भानुका छल तिमीले हटायौ। अन्धकारले छोपेका सूर्यलाई अत्रि ऋषिले अत्यन्त उत्कृष्ट मन्त्रले प्रकट गराए।

मा मामिमं तव सन्तमत्र इरस्या द्रुग्धो भियसा नि गारीत्।
त्वं मित्रो असि सत्यराधास्तौ मेहावतं वरुणश्च राजा ॥७॥

हे अग्निदेव ! तिम्रो उपस्थिति रहँदा यस द्रोही, असुररूपी, डर देखाउने अन्धकारले हामीलाई ननिलोस्। तिमी सत्यको पक्षमा रहेको मित्रजस्तै छौ। तिमी र तेजसम्पन्न वरुण दुवैले मिलेर हामीलाई रक्षा गर।

ग्राव्णो ब्रह्मा युयुजानः सपर्यन् कीरिणा देवान्नमसोपशिक्षन्।
अत्रिः सूर्यस्य दिवि चक्षुराधात्स्वर्भानोरप माया अघुक्षत् ॥८॥

ऋत्विक् अत्रि ऋषिले ढुङ्गा मिलाएर इन्द्रदेवका लागि सोम पेले। स्तोत्रले देवताको पूजाअर्चना गरे र हविले सन्तुष्ट गराए। द्युलोकमा सूर्यदेवलाई उपदेश दिएर उनका आँखा स्थापित गराएपछि स्वर्भानुको छल हटाए।

यं वै सूर्यं स्वर्भानुस्तमसाविध्यदासुरः।
अत्रयस्तमन्वविन्दन्नह्यन्ये अशक्नुवन् ॥९॥

सूर्यदेवलाई स्वर्भानुका अन्धकारले छोपेको थियो। अत्रिका वंशजहरूले त्यसबाट सूर्यलाई मुक्त गरे। यसो गर्न अरू कसैले सकेनन्।

[सूक्त – ४१]

ऋषि – अत्रि भौम। देवता – विश्वेदेवा। छन्द – त्रिष्टुप् अतिजगती एकपदा विराट्।

को नु वां मित्रावरुणावृतायन्दिवो वा महः पार्थिवस्य वा दे।
ऋतस्य वा सदसि त्रासीथां नो यज्ञायते वा पशुषो न वाजान् ॥१॥

हे मित्रावरुणदेव ! तिमीहरूको यजन गर्नमा समर्थ कुन यजमान होला ? तिमीहरूको यजन गर्ने हामी हौं। तिमीहरू द्युलोक, पृथिवीलोक र अन्तरिक्षलोकमा हाम्रो रक्षा गर। हामीलाई पशु, अन्न, धन आदिले सम्पन्न गराओ।

ते नो मित्रो वरुणो अर्यमायुरिन्द्र ऋभुक्षा मरुतो जुषन्त।
नमोभिर्वा ये दधते सुवृक्तिं स्तोमं रुद्राय मीळ्हुषे सजोषाः ॥२॥

हे मित्र, वरुण, अर्यमा, वायु, इन्द्र, ऋभुक्षा र मरुत्देवहरू हो ! सबै देवताहरूले हाम्रो स्वच्छ स्तोत्र ग्रहण गर। तिमीहरू सबै मङ्गलकारी रुद्रदेवका साथमा हाम्रो नमस्कार र अभिवादनयुक्त स्तोत्रलाई प्रेमपूर्ण रूपले मनैदेखि स्वीकार गर।

आ वां येष्ठाश्विना हुवध्यै वातस्य पत्मन्रथ्यस्य पुष्टौ।
उत वा दिवो असुराय मन्म प्रान्धांसीव यज्यवे भरध्वम् ॥३॥

हे अश्विनीकुमारहरू हो ! वायुजस्तै वेगवान् बलियो अश्व रथमा तिमीहरू राम्ररी नियुक्त गर्दछौं।

यज्ञको सेवन गर्नका लागि तिमीहरूलाई हामी आह्वान गर्दछौं। हे ऋत्विक्हरू हो ! तिमीहरू दीप्तिमान्, अत्यन्त पूज्य र प्राणप्रदाता रुद्रदेवका लागि उत्तम स्तोत्र र हविष्यान्न प्रस्तुत गर।

**प्र सक्षणो दिव्यः कण्वहोता त्रितो दिवः सजोषा वातो अग्निः।**
**पूषा भगः प्रभृथे विश्वभोजा आजिं न जग्मुराश्वश्वतमाः ॥४॥**

मेधावीहरूले जसलाई आह्वान गर्दछन्, जो अत्यन्त दिव्य छन्, शत्रुविनाशक छन्, त्यस्ता वायु, अग्नि, पूषा र भगदेवहरू मिलेर तीनै लोकमा व्याप्त रहेका सूर्यदेवसित प्रेमपूर्वक यज्ञमा आओ। सबै देवताहरू यज्ञमा सम्पूर्ण हविरूपी भोज्य पदार्थ ग्रहण गर्नका लागि युद्धक्षेत्रमा गइरहेका वेगवान् अश्वजस्तै गरी अति चाँडै आओ।

**प्र वो रयिं युक्ताश्वं भरध्वं राय एषेऽवसे दधीत धीः।**
**सुशेव एवैरौशिजस्य होता ये व एवा मरुतस्तुराणाम् ॥५॥**

हे मरुत्हरू हो ! गतिला अश्वले युक्त ऐश्वर्य हाम्रा लागि राखिदेऊ। हामी स्तोताहरू धन प्राप्त गर्न र रक्षाका लागि उत्तम बुद्धिले तिमीहरूको स्तुति गर्दछौं। हे मरुत्हरू हो ! तिमीहरूको वेगवान् अश्व पाएर औशिजका होताहरू खुसी होऊन्।

**प्र वो वायुं रथयुजं कृणुध्वं प्र देवं विप्रं पनितारमर्कैः।**
**इषुध्यव ऋतसापः पुरन्धीर्वस्वीर्नो अत्र पत्नीरा धिये धुः ॥६॥**

हे ऋत्विक्हरू हो ! तिमीहरू अत्यन्त द्युतिमान्, ज्ञानी, स्तुति गर्न योग्य वायुदेवलाई अर्चनीय स्तोत्रद्वारा रथमा बसाओ। सर्वत्र गमन गर्ने, यज्ञ ग्रहण गर्ने, राम्रो रूप भएका देवपत्नीहरू हाम्रो स्तुति स्वीकार गरेर यज्ञमा आऊन्।

**उप व एषे वन्द्येभिः शूषैः प्र यह्वी दिवश्चितयद्भिरर्कैः।**
**उषासानक्ता विदुषीव विश्वमा हा वहतो मर्त्याय यज्ञम् ॥७॥**

हे उषा र रात्रिदेवी ! तिमीहरू दुवै अत्यन्त महान् छौ। हामी वन्दनीय स्वर्गका देवताहरूका साथमा तिमीहरू दुवैलाई राम्रो हवि प्रदान गर्दछौं। तिमीहरू दुवै विदुषीले मानिसलाई सम्पूर्ण यज्ञ आदि कर्ममा प्रेरित गर्दछौ।

**अभि वो अर्चे पोष्यावतो नॄन्वास्तोष्पतिं त्वष्टारं रराणः।**
**धन्या सजोषा धिषणा नमोभिर्वनस्पतीँरोषधी राय एषे ॥८॥**

धन प्राप्तिका लागि हामी मानिसका पोषक वास्तोष्पति र त्वष्टादेवलाई उत्तम स्तोत्रले अर्चना गर्दछौं। हव्य आदिले उनीहरूलाई सन्तुष्ट गर्दछौं। धन प्रदान गर्ने, आनन्द दिने धिषणाको स्तुति गर्दछौं। वनस्पति र औषधिहरूलाई हामी स्तुति गर्दछौं।

**तुजे नस्तने पर्वताः सन्तु स्वैतवो ये वसवो न वीराः।**
**पनित आप्त्यो यजतः सदा नो वर्धान्नः शंसं नर्यो अभिष्टौ ॥९॥**

वीरजस्तै संसारका आश्रय बनेका मेघ स्वेच्छापूर्वक विहार गर्दछन्। मनग्गे दान दिने कुरामा उनी हाम्रो अनुकूल होऊन्। उनी हाम्रा लागि स्तुत्य, ज्ञानी, यजनीय र हितैषि छन्। हाम्रा स्तुतिले उनी सन्तुष्ट भएर हामीले खोजेको फल प्रदान गर्दै समृद्ध गराऊन्।

**वृष्णो अस्तोषि भूम्यस्य गर्भं त्रितो नपातमपां सुवृक्ति।**
**गृणीते अग्निरेतरी न शूषैः शोचिष्केशो नि रिणाति वना ॥१०॥**

वर्षाले धर्ती सेचन गर्नमा समर्थ मेघका गर्भमा रहेको पानीका रक्षक अग्निदेवलाई हामी उत्तम स्तोत्रले स्तुति गर्दछौं। तीनै लोकमा व्याप्त रहने अग्निदेव जाँदै गर्दा उनका आनन्ददायी रश्मिले हामीलाई दुःख दिँदैनन्, तर आफ्ना प्रदीप्त ज्वालारूपी केशले वनलाई जलाएर भस्मीभूत गराइदिन्छन्।

**कथा महे रुद्रियाय ब्रवाम कद्राये चिकितुषे भगाय।**
**आप ओषधीरुत नोऽवन्तु द्यौर्वना गिरयो वृक्षकेशाः ॥११॥**

हामी महान् रुद्रपुत्र मरुत्हरूको कसरी स्तुति गरौं ? धन प्राप्त गर्ने रहरले ज्ञानसम्पन्न भगदेवको स्तुति कसरी गरौं ? जलदेव, औषधि, आकाशदेव, वन र वृक्षरूपी कपाल हुने पर्वतदेवले हाम्रो सबै तिरबाट रक्षा गरून्।

शृणोतु न उर्जां पतिर्गिरः स नभस्तरीयाँ इषिरः परिज्मा।
शृण्वन्त्वापः पुरो न शुभ्राः परि स्रुचो बबृहाणास्याद्रेः ॥१२॥

अन्तरिक्षमा सर्वत्र यात्रा गर्ने, पृथ्वीका चारैतिर घुम्ने, बलका अधिपति वायुदेवले हाम्रो स्तुति सुनिदिऊन्। सहरजस्तै उज्याला, विशाल पर्वतका चारै तिरबाट निस्केका जलधाराले हाम्रा कुरा सुनून्।

विदा चिन्नु महान्तो ये व एवा ब्रवाम दस्मा वार्यं दधानाः।
वयश्चन सुभ्व१ आव यन्ति क्षुभा मर्तमनुयतं वधस्नैः ॥१३॥

हे महान् दर्शनीय मरुत् हो ! हाम्रो स्तोत्र चिन। हामी वरण योग्य हविष्यान्न धारण गरेर उत्तम स्तोत्रले स्तुति गर्दछौँ। हतियारले रिसाएका शत्रु नाश गर र हामीकहाँ आओ।

आ दैव्यानि पार्थिवानि जन्मपाश्चाच्छा सुमखाय वोचम्।
वर्धन्तां द्यावा गिरश्चन्द्राग्रा उदा वर्धन्तामभिषाता अर्णाः ॥१४॥

हामी द्युलोक र पृथिवीलोकबाट जलका लागि उत्तम स्तुति गर्दै राम्रा यज्ञ सम्पन्न गराउँछौँ। सूर्य, चन्द्र आदि ग्रहनक्षत्रले हाम्रा स्तुति बढाऊन्। विशाल नदीहरू जलले हामीलाई सम्पन्न गराऊन्।

पदेपदे मे जरिमा नि धायि वरूत्री वा शक्रा या पायुभिश्च।
सिषक्तु माता मही रसा नः स्मत्सूरिभिर्ऋजुहस्त ऋजुवनिः ॥१५॥

माता भूमिप्रति हामी पाइलैपिच्छे स्तुति गर्दछौँ। उनी रक्षण साधन र सामर्थ्यले हाम्रो रक्षा गरुन्। हाम्रो स्तुति उनले प्रेमपूर्वक ग्रहण गरुन् र प्रसन्न भएर अनुकूल हातले कल्याणकारी दान गरुन्। माताले आफ्ना दिव्य रसल हाम्रो सेचन गरुन्।

कथा दाशेम नमसा सुदानूनेवया मरुतो अच्छोक्तौ प्रश्रवसो मरुतोअच्छोक्तौ।
मा नोऽहिर्बुध्न्यो रिषे धादस्माकं भूदुपमातिवनिः ॥१६॥

उचित किसिमको दान गर्ने मरुत्हरूको स्तुति हामी कसरी गरौँ ? स्तोत्रको उच्चारण र मरुत्हरूको सेवा हामी कसरी गरौँ ? हविष्यान्न कसरी दिएर हामी मरुत्हरूको सत्कार गरौँ ? हे अहिर्बुध्न्यदेव ! हिंसकले हामीलाई अधीनमा पार्न नसकून्। हाम्रा शत्रु तिमी विनाश गर।

इति चिन्नु प्रजायै पशुमत्यै देवासो वनते मर्त्यो व आ देवासो वनते मर्त्यः।
अत्रा शिवां तन्वो धासिमस्या जरां चिन्मे निर्ऋतिर्जग्रसीत ॥१७॥

हे देवताहरू हो ! सन्तान र पशु प्राप्तिका लागि हामी यजमानहरू उपासना गर्दछौँ। सबै मानिस तिमीहरूको उपासना गर्दछन्। निर्ऋतिदेवले कल्याणकारी अन्न दिएर हाम्रा शरीरको पोषण गरुन् र हाम्रो बुढ्यौली हामीबाट पर सारुन्।

तां वो देवाः सुमतिमूर्जयन्तीमिषमश्याम वसवः शसा गोः।
सा नः सुदानुर्मृळयन्ती देवी प्रति द्रवन्ती सुविताय गम्याः ॥१८॥

हे प्रकाशवान् वसुहरू हो ! हामी उत्तम स्तुतिद्वारा तिमीहरूको सुमतिरूपी गाईबाट बल प्रदायक अन्न प्राप्त गरौँ। त्यस्तै दानवती, सुखदायिनी देवी सुख दिनका लागि हाम्रा नजिकै आऊन्।

अभि न इळा यूथस्य माता स्मन्नदीभिरुर्वशी वा गृणातु।
उर्वशी वा बृहद्दिवा गृणानाभ्यूर्ण्वाना प्रभृथस्यायोः ॥१९॥

गाईको समूहलाई पोषण दिने इडा र उर्वशी नदीले हाम्रो गर्जन युक्त स्तुति सुनून्। अत्यन्त दीप्ति सम्पन्न उर्वशी स्तुतिबाट खुसी भएर हाम्रा यज्ञ आदि कर्मलाई उचित रूपले हेरविचार गर्दै हाम्रो हवि ग्रहण गरुन्।

सिषक्तु न ऊर्जव्यस्य पुष्टेः ॥२०॥

बल वृद्धि गर्न र उचित पोषण दिनका लागि देवताले हाम्रो स्तुति स्वीकार गरुन्।

[सूक्त - ४२]

**ऋषि** - अत्रि भौम। **देवता** - विश्वेदेवा रुद्र। **छन्द** - त्रिष्टुप् एकपदा विराट्।

प्र शन्तमा वरुणं दीधिती गीर्मित्रं भगमदितिं नूनमश्याः।
पृषद्योनिः पञ्चहोता शृणोत्वतूर्तपन्था असुरो मयोभुः ॥१॥

हाम्रो सुखकर स्तुति र हव्य आदि पदार्थ वरुण, मित्र, भग र अदितिलाई निश्चय नै प्राप्त होऊन्। पञ्चप्राणका आधार बनेका, विचित्र वर्णका, अन्तरिक्षमा उत्पन्न हुने, निर्बाध गति भएका, प्राणप्रदाता र सुखदाता वायुदेवल हाम्रो स्तुति सुनून्।

प्रति मे स्तोममदितिर्जगृभ्यात्सूनुं न माता हृद्यं सुशेवम्।
ब्रह्म प्रियं देवहितं यदस्त्यहं मित्र वरुणे यन्मयोभु ॥२॥

माताले प्रीतिपूर्वक आफ्नो पुत्र बोकेझैं अदितिले हाम्रो स्तोत्र धारण गरुन्। देवताले रुचाउने र हाम्रो हितकारी स्तोत्र हामी मित्र र वरुणदेवका लागि अर्पित गर्दछौं।

उदीरय कवितमं कवीनामुनत्तैनमभि मध्वा घृतेन।
स नो वसूनि प्रयता हितानि चन्द्राणि देवः सविधा सुवाति ॥३॥

हे ऋत्विक्हरू हो ! ज्ञानीहरूमध्येका विशिष्ट सवितादेवलाई खुसी गराओ। यिनलाई मधुर सोमरस र घिउ आदिले अभिषेक गरेर सन्तुष्ट पार। सवितादेवले हामीलाई शुद्ध, हितकारी, आनन्ददायक र जीवनलाई प्रकाशित गर्ने ऐश्वर्य प्रदान गरुन्।

समिन्द्र णो मनसा नेषि गोभिः सं सूरिभिर्हरिवः सं स्वस्ति।
सं ब्रह्मणा देवहितं यदस्ति सं देवानां सुमत्या यज्ञियानाम् ॥४॥

हे ऐश्वर्यवान् इन्द्रदेव ! हामीलाई असल मन, गाई, अश्व, श्रेष्ठ ज्ञान र हितकारी भावना प्रदान गर। देवताहरूको हित गर्ने ज्ञान र यज्ञीय कर्मले देवताको जस्तै सद्बुद्धि हामीलाई प्रदान गर।

देवो भगः सविता रायो अंश इन्द्रो वृत्रस्य सञ्जितो धनानाम्।
ऋभुक्षा वाज उत वा पुरन्धिरवन्तु नो अमृतासस्तुरासः ॥५॥

दीप्तिमान् भगदेव, सर्वैका प्रेरक सवितादेव, धनका स्वामी त्वष्टादेव, वृत्रहन्ता इन्द्रदेव तथा धनका विजेता ऋभुक्षा, वाज र पुरन्धि आदि सबै अमरदेव चाँडै हाम्रा यज्ञमा उपस्थित भएर हाम्रो रक्षा गरुन्।

मरुत्वतो अप्रतीतस्य जिष्णोरजूर्यतः प्र ब्रवामा कृतानि।
न ते पूर्वे मघवन्नापरासो न वीर्यं१ नूतनः कश्चनाप ॥६॥

हामी यजमानहरू मरुत्हरूको सहायता पाउने इन्द्रदेवका महान् कार्यको बयान गर्दछौं। इन्द्रदेव युद्धबाट कहिल्यै भाग्दैनन्। यी सधैं विजयी र बुढा नहुने खालका छन्। हे ऐश्वर्यशाली इन्द्रदेव ! तिम्रो जति पराक्रम न त उहिले कसैले गरेको थियो, न त पुराना कसैले गरेको छ, न त नयाँले गरेको छ।

उप स्तुहि प्रथमं रत्नधेयं बृहस्पतिं सनितारं धनानाम्।
यः शंसते स्तुवते शम्भविष्ठः पुरूवसुरागमज्जोहुवानम् ॥७॥

हे ऋत्विक्हरू हो ! सर्वश्रेष्ठ, रत्न धारण गर्ने र धन प्रदान गर्ने बृहस्पतिदेवलाई तिमीहरू स्तुति गर। उनी हविप्रदातालाई प्रशस्त धन दिनका लागि आउँछन्। उनी प्रशंसा र स्तुति गर्नेहरूलाई साह्रै सुख प्रदान गर्दछन्।

तवोतिभिः सचमाना अरिष्टा बृहस्पते मघवानः सुवीराः।
ये अश्वदा उत वा सन्ति गोदा ये वस्त्रदाः सुभगास्तेषु रायः ॥८॥

हे बृहस्पतिदेव ! तिमीबाट संरक्षित भएर हामी मानिसहरू हिंसाबाट मुक्त, ऐश्वर्यवान् र उत्तम वीर पुत्रहरूले सम्पन्न होऔं। तिम्रा अनुग्रहले जुन मानिस उत्तम अश्व, गाई र वस्त्र दान गर्दछन् उनीलाई सौभाग्यशाली ऐश्वर्य प्राप्त हुन्छ।

विसर्माणं कृणुहि वित्तमेषां ये भुञ्जते अपृणन्तो न उक्थैः।
अपव्रतान्प्रसवे वावृधानान्ब्रह्मद्विषः सूर्याद्यावयस्व ॥९॥

हे बृहस्पतिदेव ! स्तुति गर्नेलाई दान नगरीकन आफैं मात्र खाने धनवान्को धन नष्ट गराइदेऊ। जसले व्रत धारण गर्दैन र मन्त्रसित द्वेष गर्दछ, अमर्यादित सन्तान उत्पत्ति गरेर उन्नति गर्न खोज्छ, त्यस्ता मानिसलाई तिमी सूर्यदेवद्वारा नाश गराइदेऊ।

य ओहते रक्षसो देववीतावचक्रेभिस्तं मरुतो नि यात।
यो वः शमीं शशमानस्य निन्दात्तुच्छ्यान्कामान्करते सिष्विदानः ॥१०॥

हे मरुत्हरू हो ! जुन मानिस यज्ञमा राक्षसी वृत्ति देखाउँछ, जो तिम्रो स्तुति गर्नेलाई निन्दा गर्दछ, जो अन्न, पशु आदिको रहर पूरा गर्न नीच काम गर्दछ, त्यस्ता मानिसलाई तिमी पाङ्ग्राविनाका रथमा हालेर अन्धकार खाँलामा डुबाइदेऊ।

तमु ष्टुहि यः स्विषुः सुधन्वा यो विश्वस्य क्षयति भेषजस्य।
यक्ष्वा महे सौमनसाय रुद्रं नमोभिर्देवमसुरं दुवस्य ॥११॥

हे ऋत्विक्‌हरू हो ! रुद्रदेवको स्तुति उचित किसिमले गर। उत्तम धनुषबाण लिएका र सम्पूर्ण औषधिद्वारा रोग निवारण गर्ने रुद्रदेवलाई यजन गर। महान् मङ्गलकारी जीवनका लागि दीप्तिमान् र प्राणप्रदाता रुद्रदेवलाई नमस्कारपूर्वक सेवा गर।

दमूनसो अपसो ये सुहस्ता वृष्णः पत्नीर्नद्यो विभ्वतष्टाः।
सरस्वती बृहद्दिवोत राका दशस्यन्तीर्वरिवस्यन्तु शुभ्राः ॥१२॥

उदार मन तथा निर्माण कार्यमा कुशल हात भएका ऋभुदेव, विभुहरूले बनाएको बाटो हिँड्ने सरस्वती नदी, वर्षणशील इन्द्रदेवका पत्नीरूपी अरू नदीहरू र तेजयुक्त रात्रि आदि समस्त देवशक्तिहरूले साधकको मनोकामना पूर्ण गराउँछन्। ती सबैले हामीलाई धन प्रदान गरुन्।

प्र सू महे सुशरणाय मेधां गिरं भरे नव्यसीं जायमानाम्।
य आहना दुहितुर्वक्षणासु रूपा मिनानो अकृणोदिदं नः ॥१३॥

उत्तम रक्षक अनेकौं रूपमा स्तुत्य महान् इन्द्रदेवलाई हामी बुद्धिपूर्वक नवीन रचना समर्पित गर्दछौं। वर्षा गराउने इन्द्रदेवले कन्यारूपी पृथिवीको हितका लागि नदीहरूमा जल उत्पन्न गरेर प्रवाहमान बनाए।

प्र सुष्टुतिः स्तनयन्तं रुवन्तमिळस्पतिं जरितर्नूनमश्याः।
यो अब्दिमाँ उदनिमाँ इयर्ति प्र विद्युता रोदसी उक्षमाणः ॥१४॥

हे स्तोताहरू हो ! तिमीहरूको उत्तम स्तुति गर्जनशील ध्वनि भएका जलका स्वामी मेघले निश्चित रूपमा प्राप्त गरुन्। मेघ जलले पूर्ण छन्, वर्षा गराउँछन् र विद्युत्का आलोकले सम्पूर्ण द्यावापृथिवीलाई आलोकित गर्दै गमन गर्दछन्।

एष स्तोमो मारुतं शर्धो अच्छा रुद्रस्य सूनूँर्युवन्यूँरुदश्याः।
कामो राये हवते मा स्वस्त्युप स्तुहि पृषदश्वाँ अयासः ॥१५॥

हाम्रो स्तोत्र रुद्रदेवका पुत्ररूपी मरुत्‌हरूले प्राप्त गरुन्। कल्याणकारी धन प्राप्तिका इच्छाले हामीलाई यसले निरन्तर प्रेरित गर्दछ। बिन्दुदार चिह्न भएका र यज्ञतर्फ जाने मरुत्‌हरूलाई हामी स्तुति गर्दछौं।

प्रैष स्तोमः पृथिवीमन्तरिक्षं वनस्पतीँरोषधी राये अश्याः।
देवोदेवः सुहवो भूतु मह्यं मा नो माता पृथिवी दुर्मतौ धात् ॥१६॥

धन प्राप्त गर्ने इच्छाले हामीबाट निवेदित स्तोत्र पृथ्वी, अन्तरिक्ष, वनस्पति र औषधिले प्राप्त गरुन्। यज्ञमा सम्पूर्ण दीप्तिमान् देवताहरूलाई उचित आह्वान गरियोस्। माता पृथ्वीले हामीलाई दुर्बुद्धिमा पर्न नदिऊन्।

उरौ देवा अनिबाधे स्याम ॥१७॥

हे देवताहरू हो ! तिमीहरूको अनुग्रहबाट निर्विघ्न भएर अत्यन्त सुखमा हामी सबैले रहन पाऔं।

समश्विनोरवसा नूतनेन मयोभुवा सुप्रणीती गमेम।
आ नो रयिं वहतमोत वीराना विश्वान्यमृता सौभगानि ॥१८॥

हामी अश्विनीकुमारका मङ्गलकारी, सुखकारी, कृपापूर्ण र नयाँनौला रक्षणसाधनले सम्पन्न होऔं। अमर अश्विनीकुमारहरूले हामीलाई उत्तम ऐश्वर्य, वीर पुत्र र सम्पूर्ण सौभाग्यहरू प्रदान गरुन्।

[सूक्त – ४३]

ऋषि – अत्रि भौम। देवता – विश्वेदेवा। छन्द – त्रिष्टुप् एकपदा विराट्।

आ धेनवः पयसा तूर्ण्यर्था अमर्धन्तीरुप नो यन्तु मध्वा।
महो राये बृहतीः सप्त विप्रो मयोभुवो जरिता जोहवीति ॥१॥

द्रुत वेगले प्रवाहित नदीहरू अनुकूल स्थितिमा हाम्रा नजिक आऊन्। ज्ञानले सम्पन्न स्तोताहरू धन प्राप्तिका रहरले सुखदायी सात नदीलाई आह्वान गर्दछन्।

आ सुष्टुती नमसा वर्तयध्यै द्यावा वाजाय पृथिवी अमृध्रे।
पिता माता मधुवचाः सुहस्ता भरेभरे नो यशसावविष्टाम् ॥२॥

हामी अन्न प्राप्तिका लागि उत्तम स्तुति र नमस्कार अभिवादनले हिंसाविहीन आकाश र पृथिवीलाई

आह्वान गर्दछौं। मिठो बोली हुने, कुशल हात हुने र यशस्वी पितारूपी आकाश र माता पृथिवीले प्रत्येक युद्धमा हाम्रो रक्षा गरुन्।

**अध्वर्यवश्चकृवांसो मधूनि प्र वायवे भरत चारु शुक्रम्।**
**होतेव नः प्रथमः पाह्यस्य देव मध्वो ररिमा ते मदाय ॥३॥**

हे अध्वर्युहरू हो ! मधुर सोमरस पेलेर सुन्दर र दीप्तिमान् भएपछि सबैभन्दा पहिले तिमीहरू वायुलाई अर्पित गर। हे वायुदेव ! तिमी होताका रूपमा हामीले प्रदान गरेको सोमरस सर्वप्रथम पान गर। तिमीलाई खुसी गराउनका लागि हामी यो मधुर सोमरस अर्पण गर्दछौं।

**दश क्षिपो युञ्जते बाहू अद्रिं सोमस्य या शमितारा सुहस्ता।**
**मध्वो रसं सुगभस्तिर्गिरिष्ठां चनिश्चदद् दुदुहे शुक्रमंशुः ॥४॥**

ऋत्विक्हरूका दसै औँला र दुवै पाखुरा ढुङ्गासँगै सोमरस पेल्न लागेका छन्। हातमा सिप भएका ऋत्विक्हरू खुसी हुँदै पर्वतमा उम्रिएका सोमवल्ली नामका लहराबाट रस दुहुने गर्दछन्। त्यसैबाट दीप्तिमान् सोमरसको धारा बग्दछ।

**असावि ते जुजुषाणाय सोमः क्रत्वे दक्षय बृहते मदाय।**
**हरी रथे सुधुरा योगे अर्वागिन्द्र प्रिया कृणुहि हूयमानः ॥५॥**

हे इन्द्रदेव ! तिम्रो सुसार गर्न, पराक्रमी कार्य गर्न, बल प्राप्त गर्न र महान् हर्ष प्राप्त गर्नका लागि हामी सोम पेल्दछौं। हे इन्द्रदेव ! हामीले आह्वान गरेपछि बलियो धुरा भएका रथमा नारिएका प्रिय अश्व लिएर हाम्रा यज्ञमा आऊ।

**आ नो महीमरमतिं सजोषा ग्नां देवीं नमसा रातहव्याम्।**
**मधोर्मदाय बृहतीमृतज्ञामाग्ने वह पथिभिर्देवयानैः ॥६॥**

हे अग्निदेव ! हामीले प्रीतिपूर्वक सेवा गरेपछि तिमी सर्वत्र व्याप्त, यज्ञको ज्ञान भएकी, महान् तेजस्विनी ग्ना देवीलाई देवताहरूका गन्तव्य मार्गबाट हामीकहाँ लिएर आऊ। हामीले विनम्रतापूर्वक चढाएको हव्य पदार्थ र मधुर सोमरस ती देवीले ग्रहण गरेर हर्षित होऊन्।

**अञ्जन्ति यं प्रथयन्तो न विप्रा वपावन्तं नाग्निना तपन्तः।**
**पितुर्न पुत्र उपसि प्रेष्ठ आ घर्मो अग्निमृतयन्नसादि ॥७॥**

रूप राम्रो भएका शरीरलाई गहनाले पूरा सजाएझैं ज्ञानी पुरुषहरू यज्ञकुण्डलाई यज्ञका साधनले पूर्ण गर्दै आगो बाल्दछन्। यज्ञ सम्पन्न गर्नका लागि तयारी यज्ञकुण्डले छोरो काखमा लिन खोज्ने आमाझैं अग्निलाई धारण गर्दछ।

**अच्छा मही बृहती शन्तमा गीर्दूतो न गन्त्वश्विना हुवध्यै।**
**मयोभुवा सरथा यातमर्वाग्गन्तं निधिं धुरमाणिर्न नाभिम् ॥८॥**

पूज्य, महान् र सुखप्रद हाम्रो वाणी दूतका रूपमा अश्विनीकुमारलाई यस यज्ञस्थलमा बोलाउनका लागि सोझै जाओस्। हे सुखदायक अश्विनीकुमारहरू हो ! गमनशील रथका धुराको केन्द्रमा रहेको किलोजस्तै तिमीहरू हाम्रा यज्ञका मुख्य आधार हौ। त्यसो हुनाले तिमीहरू रथमा आरुढ भएर हाम्रा यज्ञका समृद्धिका रूपमा शोभायमान भइदेओ।

**प्र तव्यसो नमउक्तिं तुरस्याहं पूष्ण उत वायोरदिक्षि।**
**या राधसा चोदितारा मतीनां या वाजस्य द्रविणोदा उत त्मन् ॥९॥**

अत्यन्त बलशाली र तीव्र गतिमा यात्रा गर्ने पूषा र वायुदेवलाई नमस्कारपूर्वक हामी स्तुति वचन अभिव्यक्त गर्दछौं। यी पूषा र वायुदेव आराधना गरिंदाखेरि बुद्धिलाई प्रेरित गर्दछन् र आराधकलाई उत्तम अन्न एवं बलले युक्त गराउँछन्।

**आ नामभिर्मरुतो वक्षि विश्वाना रूपेभिर्जातवेदो हुवानः।**
**यज्ञं गिरो जरितुः सुष्टुतिं च विश्वे गन्त मरुतो विश्व ऊती ॥१०॥**

सबै प्राणीलाई जान्ने हे अग्निदेव ! हामीले आह्वान गर्दाखेरि तिमी विभिन्न नामका र विभिन्न रूपका मरुत्हरूसित उपस्थित होऊ। हे मरुत्हरू हो ! स्तोताका वाणीको उत्तम स्तुति श्रवण गरेर उत्तम रक्षण साधनसहित हाम्रा यज्ञस्थलमा आओ।

आ नो दिवो बृहतः पर्वतादा सरस्वती यजता गन्तु यज्ञम्।
हवं देवी जुजषाणा घृताची शग्मां नो वाचमुशती शृणोतु ॥११॥

सर्वबाट पूजनीय सरस्वती देवी द्युलोक र पर्वतबाट हाम्रा यज्ञमा आइपुगून्। विउजस्ता कान्तिले युक्त ती देवी हाम्रो हवि स्वीकार गर्दै स्वेच्छाले हाम्रो सुखकारी वचन सुनून्।

आ वेधसं नीलपृष्ठं बृहस्पतिं सदने सादयध्वम्।
सादद्योनिं दम आ दीदिवांसं हिरण्यवर्णमरुषं सपेम ॥१२॥

अत्यन्त मेधावी, नीलो वर्णको आभायुक्त शरीर भएका महान् बृहस्पतिदेव हाम्रा यज्ञगृहमा अधिष्ठित होऊन्। यज्ञगृहका माभमा उचित ठाउँमा प्रतिष्ठित दीप्तिमान्, स्वर्णिम आभासम्पन्न, प्रकाशक बृहस्पतिदेवलाई हामी सेवा गरौँ।

आ धर्णसिर्बृहद्दिवो रराणो विश्वेभिर्गन्त्वोमभिर्हुवानः।
ग्ना वसान ओषधीरमृध्रास्त्रिधातुशृङ्गो वृषभो वयोधाः ॥१३॥

सम्पूर्ण संसार धारण गर्ने अग्निदेव, सम्पूर्ण रक्षण साधनका साथ हाम्रा यज्ञस्थलमा आऊन्। अत्यन्त दीप्तिमान्, आनन्दप्रद हुनाले उनी सर्वत्रबाट बोलाइन्छन्। प्रज्वलित शिखा भएका अग्निदेव औषधिले ढाकिएर निर्बाध गतिमा तीन रङ्गका ज्वालामा देखिन्छन्। अभीष्ट सिद्ध गराउने र अन्न धारण गर्ने उनै हुन्।

मातुष्पदे परमे शुक्र आयोर्विपन्यवो रास्पिरासो अग्मन्।
सुशेव्यं नमसा रातहव्याः शिशुं मृजन्त्यायवो न वासे ॥१४॥

सम्पूर्ण होता र ऋत्विक्हरू मातास्वरूपको पृथ्वीका स्वच्छ र अत्यन्त उच्च स्थानमा जान्छन्। शिशुलाई कोमल वस्त्र ओढाइएझैँ भर्खर हुर्कंदै गरेका सुखदायक अग्निमा हविदाता यजमान स्तुतिका साथ हविष्यान्नको आवरण ओढाउँछन्।

बृहद्वयो बृहते तुभ्यमग्ने धियाजुरो मिथुनासः सचन्त।
देवोदेवः सुहवो भूतु मह्यं मा नो माता पृथिवी दुर्मतौ धात् ॥१५॥

हे अग्निदेव ! तिमी अत्यन्त महान् स्वरूप भएका छौ। तिम्रो स्तुति गर्दै बुढिएका यी दम्पती एकै साथ मनगगे अन्न दिइरहेका छन्। हे देवताका पनि देवतारूपी अग्निदेव ! तिमी उचित आह्वानले बोलाइएका छौ। माताका रूपमा रहेकी पृथिवीले हामीलाई दुर्बुद्धिमा स्थापित नगरुन्।

उरौ देवा अनिबाधे स्याम ॥१६॥

हे देवताहरू हो ! तिम्रो अनुग्रहले निर्विघ्न भएर अत्यन्त सुखमा हामी रहन पाऔँ।

समश्विनोरवसा नूतनेन मयोभुवा सुप्रणीती गमेम।
आ नो रयिं वहतमोत वीराना विश्वान्यमृता सौभगानि ॥१७॥

अश्विनीकुमारका मङ्गलकारी, सुखकारी, कृपापूर्ण र नयाँनौला रक्षणसाधनले हामी सम्पन्न होऔँ। अमर अश्विनीकुमारहरू हो ! तिमीहरू हामीलाई उत्तम ऐश्वर्य, वीर पुत्र र सम्पूर्ण सौभाग्य प्रदान गर।

[सूक्त - ४४]

ऋषि - अवत्सार काश्यप। देवता - विश्वेदेवा। छन्द - जगती त्रिष्टुप्।

तं प्रत्नथा पूर्वथा विश्वथेमथा ज्येष्ठतातिं बर्हिषदं स्वर्विदम्।
प्रतीचीनं वृजनं दोहसे गिराशुं जयन्तमनु यासु वर्धसे ॥१॥

उहिलेका याजकहरू, हाम्रा पुर्खाहरू र यस बेलाका सबै प्राणीहरूको जस्तो हामी पनि इन्द्रदेवलाई स्तुति गरेर आफ्ना मनको रहर पूरा गरौँ। इन्द्रदेव देवताहरूमा श्रेष्ठ, सर्वज्ञ, हामी सबैका अगाडि कुशका आसनमा बसेका बलिया, गतिमान् र विजयशील छन्। स्तुतिले उनलाई प्रसन्न गरौँ।

श्रिये सुदृशीरुपरस्य याः स्वर्विरोचमानः ककुभामचोदते।
सुगोपा असि न दभाय सुक्रतो परो मायाभिर्ऋत आस नाम ते ॥२॥

हे इन्द्रदेव ! तिमी स्वर्गलोकमा आफ्ना आभाले प्रकाशित हुन्छौ। वर्षाविहीन मेघका माभमा पसेर सुन्दर जलराशि खगाउँछौ र सबै दिशा शोभायमान गराउँछौ। तिमी वर्षा आदिका उत्तम कर्मद्वारा प्रजाको रक्षा गर्दछौ। तिमी प्राणीहिंसा नगर्ने र प्रपञ्च मेटाउने हौ। त्यसो भएकैले तिम्रो नाम सत्य लोकमा उहिलेदेखि स्थायी रहेको छ।

अत्यं हविः सचते सच्च धातु चारिष्टगातुः स होता सहोभरिः।
प्रसर्स्राणो अनु बर्हिर्वृषा शिशुर्मध्ये युवाजरो विस्रुहा हितः ॥३॥

अग्निदेव निर्बाध गति भएका, अरणीमन्थनले बलपूर्वक उत्पन्न हुने र यज्ञका सम्पादक हुन्। उनी स्थिर र अस्थिर सत्यरूपी हवि प्राप्त गर्दछन्। पहिले अग्निदेव शिशुको रूपमा कुशको आसनमा बस्दछन्, त्यसपछि समिधाका माझमा विराजित भएर अत्यन्त तरुण र अजर अवस्था प्राप्त गर्दछन्।

प्र व एते सुयुजो यामन्निष्टये नीचीरमुष्मै यम्य ऋतावृधः।
सुयन्तुभिः सर्वशासैरभीशुभिः क्रिविर्नामानि प्रवणे मुषायति ॥४॥

यज्ञ बढाउने र याज्ञिकलाई धनऐश्वर्य प्रदान गर्ने सूर्यदेवका किरण यज्ञमा जाने रहर गर्दै अवतीर्ण हुन्छन्। सूर्यदेवबाट उत्तम वेगले रश्मि अवतीर्ण हुन्छन्। सबैमाथि शासन गर्छन् र अन्तरिक्षका मार्गबाट जलराशि शोषण गर्छन्।

सञ्जर्भुराणस्तरुभिः सुतेगृभं वयाकिनं चित्तगर्भासु सुस्वरुः।
धारवाकेष्वृजुगाथ शोभसे वर्धस्व पत्नीरभि जीवो अध्वरे ॥५॥

हे अग्निदेव ! तिमी अत्यन्त सोझो मार्गबाट गमन गर्दछौ। समिधाले प्रदीप्त भएर तिमी आयुवर्द्धक, पेलेर निकालिएको सोमरस पान गर्दछौ। विद्वान् साधकहरूका हृदयरूपी गुफामा स्थापित भएर अत्यन्त शोभायमान हुन्छौ। यज्ञमा चेतन भएर तिमी पत्नीरूपी ज्वालालाई बढाऊ।

यादृगेव ददृशे तादृगुच्यते सं छायया दधिरे सिध्रयाप्स्वा।
महीमस्मभ्यमुरुषमुरु ज्रयो बृहत्सुवीरमनपच्युतं सहः ॥६॥

देवताहरू जस्ता देखिन्छन् उसै रूपमा वर्णित हुन्छन्। देवताहरूले आफ्ना सिद्ध तेजले जलको आवरणमा लुक्ने पृथ्वीलाई धारण गरे। उनीहरूले हामीलाई महान् विजय, उत्तम वीर पुत्र, अक्षय धन र विराट् बल प्रदान गरुन्।

वेत्यग्रुर्जनिवान्वा अति स्पृधः समर्यता मनसा सूर्यः कविः।
घ्रंसं रक्षन्तं परि विश्वतो गयमस्माकं शर्म वनवत्स्वावसुः ॥७॥

सबैलाई उत्पत्ति गर्ने, उचित र सम्पूर्ण ज्ञान भएका सूर्यदेव आफ्ना उत्सुक मनका कारण सबै प्रतिस्पर्धी ग्रहनक्षत्रमा अग्रणी रहन्छन्। सम्पूर्ण विश्वलाई चारै तिरबाट रक्षा गर्ने तेजस्वी सूर्यदेवलाई हामी उचित रूपले स्तुति गरौं। सूर्यदेव हामीलाई दीप्तिमान् र श्रेष्ठ ऐश्वर्यका साथै अत्यन्त सुख प्रदान गरुन्।

ज्यायांसमस्य यतुनस्य केतुन ऋषिस्वरं चरति यासु नाम ते।
यादृश्मिन्धायि तमपस्यया विदद्य उ स्वयं वहते सो अरं करत् ॥८॥

हे उचित रूपमा यज्ञ सम्पन्न गर्ने अग्निदेव ! ऋषिहरूका स्तुतिपरक वाणी तिम्रा नजिकै आउँछन्। स्तुतिले तिम्रा नामको कीर्ति बढाउँछ। ऋषिहरू कामना गरेको कुरो आफ्ना पराक्रमले प्राप्त गर्दछन्। जिम्मा लिएको काम उनीहरू पूरा गर्दछन्।

समुद्रमासामव तस्थे अग्रिमा न रिष्यति सवनं यस्मिन्नायता। अत्रा न हार्दि क्रवणस्य रेजते यत्रा मतिर्विद्यते पूतबन्धनी ॥९॥

स्तोत्रमध्येको समुद्रजस्तो सर्वश्रेष्ठ स्तोत्र सूर्यदेवसम्म पुगेर उचित रूपमा रहोस्। जुन यज्ञमा स्तोत्रको वृद्धि हुन्छ त्यो कहिल्यै नाश हुँदैन। जहाँ पवित्र भावले बुद्धि बाँधिन्छ, त्यहाँ याज्ञिकका मनमा उठ्ने रहर असफल हुँदैनन्।

स हि क्षत्रस्य मनसस्य चित्तिभिरेवावदस्य यजतस्य सध्रेः।
अवत्सारस्य स्पृणवाम रण्वभिः शविष्ठं वाजं विदुषा चिदर्ध्यम् ॥१०॥

सवितादेवलाई अत्यन्त रमणीय स्तोत्रले हामी सबैले स्तुति गर्नुपर्दछ। विद्वान्झैं उनी पनि अत्यन्त पूज्य छन्। हामी क्षत्र, मनस, अवद, यजत, सध्रि र अवत्सार नामका ऋषिहरू सूर्यदेवलाई स्तुति गर्दै उनीबाट उचित बल र अन्नको कामना गर्दछौं।

श्येन आसामदितिः कक्ष्योऽ मदो विश्ववारस्य यजतस्य मायिनः।
समन्यमन्यमर्थयन्त्येतवे विदुर्विषाणं परिपानमन्ति ते ॥११॥

सोमरसले हर्ष उत्पन्न गराउँछ। यो श्येनजस्तै सर्वत्र गमनशील र अदितिजस्तै व्यापक छ। सोमरस

विश्ववार, यजत र मायी ऋषिद्वारा पेलेर निकालिएको हो। यिनीहरू सबै सोम पान गरेर खुसी हुँदै बलियो हुने रहर गर्दछन्।

**सदापृणो यजतो वि द्विषो वधीद्वाहुवृक्तः श्रुतवित्तर्यो वः सचा।**
**उभा स वरा प्रत्येति भाति च यदीं गणं भजते सुप्रयावभिः ॥१२॥**

देवताको उत्तम स्तुति गर्ने सदापृण, यजत, बाहुवृक्त, श्रुतवित् र तर्य ऋषिहरू आपसमा मिलेर आआफ्ना शत्रु विनाश गरुन्। ती ऋषिहरू यो लोक र परलोक दुवैका इच्छा पूरा गराउँदै तेजस्वी र दीप्तिमान् होऊन्। यिनीहरू विश्वेदेवको विशेष स्तुति गर्दछन्।

**सुतम्भरो यजमानस्य सत्पतिर्विश्वासामूधः स धियामुदञ्चनः।**
**भरद्धेनू रसवच्छिश्रिये पयोऽनुब्रुवाणो अध्येति न स्वपन् ॥१३॥**

यजमान अवत्सारका यज्ञमा सुतम्भर ऋषिले सत्य एवं धर्मकार्य पालन गर्छन्। उनी सम्पूर्ण यज्ञकार्यमा स्तुतिको स्रोतजस्तै छन्। यस यज्ञमा गाईले रसरूपी पेय पदार्थ प्रदान गर्दछन्। स्तोताले यज्ञको सारभूत फल प्राप्त गर्दछन् तर सुताहाले होइन।

**यो जागार तमृचः कामयन्ते योजागार तमु सामानि यन्ति।**
**यो जागार तमयं सोम आह तवाहमस्मि सख्ये न्योकाः ॥१४॥**

ऋचाहरूले जागरुकसितै आशा राखेका हुन्छन्। जाग्रतलाई सामगानको लाभ प्राप्त हुन्छ। जाग्रतहरूसितै सोमले म तिमीसित मित्रभावले रहन्छु भन्दछ।

**अग्निर्जागार तमृचः कामयन्तेऽग्निर्जागार तमु सामानि यन्ति।**
**अग्निर्जागार तमयं सोम आह तवाहमस्मि सख्ये न्योकाः ॥१५॥**

अग्निदेव जाग्रत रहन्छन्, त्यसैले उनलाई ऋचाहरूले खोज्छन्। अग्निदेव चैतन्यसम्पन्न छन्। त्यसैले सामले उनलाई गाउँछ। चैतन्य अग्निसित सोमले म सधैं तिम्रो मित्रभावमा आश्रय पाऊँ भन्दछ।

## [सूक्त - ४५]

ऋषि - सदापृण आत्रेय। देवता - विश्वेदेवता। छन्द - त्रिष्टुप् पु रस्ताज्ज्योति।

**विदा दिवो विष्यन्नद्रिमुक्थैरायत्या उषसो अर्चिनो गुः।**
**अपावृत व्रजिनीरुत्स्वर्गाद्वि दुरो मानुषीर्देव आवः ॥१॥**

अङ्गिराहरूका स्तुतिले इन्द्रदेवले स्वर्गबाट मेघमा वज्र प्रहार गरे। त्यसो भएपछि उषाका रश्मिको ढोका खुल्यो र किरण सर्वत्र व्याप्त भयो। बाक्लिएको अन्धकार नाश भयो र सूर्यदेव प्रकट भए। उनै सूर्यदेवले सबै मानिसका ढोका खोले।

**वि सूर्यो अमतिं न श्रियं सादोर्वाद् गवां माता जानती गात्।**
**धन्वर्णसो नद्य१ःखादोअर्णाः स्थूणेव सुमिता दृंहत द्यौः ॥२॥**

लुगागहनाले मानिस सजिएझैं सूर्यदेव विभिन्न वर्णका दीप्तिले शोभायमान हुन्छन्। प्रकाशक रश्मिकी माताजस्ती उषा सूर्योदयको दर्शन गर्दै विशाल आकाशबाट अवतीर्ण हुन्छिन्। तटमा तीव्र प्रहार गरिरहेका नदीहरू अति वेगका साथ प्रवाहित हुन्छन्। घरको बलियो खम्बाजस्तो द्युलोक तीव्र प्रकाशले झन बलियो भएको छ।

**अस्मा उक्थाय पर्वतस्य गर्भो महीनां जनुषे पूर्व्याय।**
**वि पर्वतो जिहीत साधत द्यौराविवासन्तो दसयन्त भूम ॥३॥**

भूमिलाई उत्पादनशील बनाउनका लागि उहिलेका पुराना स्तोत्रले मेघका गर्भबाट जल वर्षा गराउँछन्। वर्षा गर्ने काममा आकाश खटिएको छ। निरन्तर काममा लाग्ने मानिस बढी परिश्रम गर्न तयार भएका छन्।

**सूक्तेभिर्वो वचोभिर्देवजुष्टैरिन्द्रा न्व१ग्नी अवसे हुवध्यै।**
**उक्थेभिर्हि ष्मा कवयः सुयज्ञा आविवासन्तो मरुतो यजन्ति ॥४॥**

हे इन्द्र र अग्निदेव ! देवताहरूले मन पराउने सूक्तरूपी वचनले हामी आफ्नो सुरक्षाका लागि तिमीहरू दुवैलाई आह्वान गर्दछौं। मरुत्हरूले यज्ञ सम्पादन गरेजस्तै उत्तम विधिले ज्ञानीजन तिमीहरूकै पूजा गर्दछन्।

एतो न्व१द्य सुध्यो३ भवाम प्र दुच्छुना मिनवामा वरीयः।
आरे द्वेषांसि सनुतर्दधामायाम प्राञ्चो यजमानमच्छ ॥५॥
तिमीहरू हाम्रा यस यज्ञमा चाँडै आओ। हामी असल काम गर्न सक्ने होऔँ। हाम्रा शत्रु विनाश गर। गोप्य शत्रुलाई टाढा राख र यज्ञका निम्ति यजमानकहाँ जाओ।

एता धियं कृणवामा सखायोऽप या मातौँ ऋणुत व्रजं गोः।
यया मनुर्विशिशिप्रं जिगाय यया वणिग्वङ्कुरापा पुरीषम् ॥६॥
हे मित्रहरू हो ! जसका कारणले मातारूपी उषाले विशाल किरणसमूह उत्पन्न गरिन्, जसका कारण मनुले विशिशिप्रलाई जिते र वंकु नामका व्यापारीले विशाल जलराशि प्राप्त गरेका थिए, आओ हामी उनैको स्तुति गरौँ।

अनूनोदत्र हस्तयतो अद्रिरार्चन्येन दश मासो नवग्वाः।
ऋतं यती सरमा गा अविन्ददिश्वानि सत्याङ्गिराश्चकार ॥७॥
ढुङ्गामा सोमरस पेल्दै नवग्वहरूले दस महिनासम्म त्यस ढुङ्गाको पूजाअर्चना गरे। त्यो ढुङ्गो हातका इसारामा ध्वनि उत्पन्न गर्दछ। यज्ञतिर फर्किएर सरमाले स्तुति प्राप्त गरेपछि अङ्गिराले सबै कर्म सफल गरेर देखाए।

विश्वे अस्या व्युषि माहिनायाः सं यद् गोभिरङ्गिरसो नवन्त।
उत्स आसां परमे सधस्थ ऋतस्य पथा सरमा विदद् गाः ॥८॥
यिनै पूजनीय उषा प्रकट भएपछि अङ्गिराहरूले गाईबाट दुध प्राप्त गरे। गाईका दुध उनले यज्ञका उच्च स्थानमा राखे। सरमा यज्ञमार्गबाट गएर उनको स्तुति बुझे।

आ सूर्यो यातु सप्ताश्वः क्षेत्रं यदस्योर्विया दीर्घयाथे।
रघः श्येनः पतयदन्धो अच्छा युवा कविर्दीदयद् गोषु गच्छन् ॥९॥
सात अश्वसहित सूर्यदेव हामीतिर आऊन्। लामो प्रवासका लागि उनले धेरै परसम्म जानुपर्छ। श्येन पक्षीजस्तो द्रुतगामी भएर हामीले प्रदान गरेको हविष्यान्न लिनका लागि सूर्य ओर्लिएर आऊन्। सधैँका युवा र सबै कुराको ज्ञान भएका सूर्यदेव किरणका माझमा देदीप्यमान रहून्।

आ सूर्यो अरुहच्छुक्रमर्णोऽयुक्त यद्धरितो वीतपृष्ठाः।
यद्ना न नावमनयन्त धीरा आशृण्वतीरापो अर्वागतिष्ठन् ॥१०॥
चम्किलो शरीर भएको अश्व रथमा जोतेपछि सूर्यदेव अन्तरिक्षव्यापी जलमा पसे। त्यसपछि जलमा डुबेको नाँका बाहिर निकालिएझैँ विद्वान्हरूले स्तोत्रद्वारा सूर्यदेवलाई बाहिर निकाले। उनीहरूका स्तुतिले जलराशि पनि तलतिर ओर्लियो।

धियं वो अप्सु दधिषे स्वर्षां ययातरन्दश मासो नवग्वाः।
अया धिया स्याम देवगोपा अया धिया तुतुर्यामात्यंहः ॥११॥
हे देवताहरू हो ! नवग्वहरूले दस महिनासम्म जुन स्तुतिले अनुष्ठान पूरा गरे, जल प्राप्त गराउने, उत्तम ऐश्वर्य दिने उही स्तुति हामी धारण गर्दछौँ। यसै स्तुतिले हामीलाई देवताहरूले सुरक्षित गरुन् र हामी पापकर्मबाट पनि जोगिऔँ।

[सूक्त - ४६]

ऋषि - प्रतिक्षत्र आत्रेय। देवता - विश्वेदेवा देवपत्नी। छन्द - जगती त्रिष्टुप्।

हयो न विद्वाँ अयुजि स्वयं धुरि तां वहामि प्रतरणीमवस्युवम्।
नास्या वश्मि विमुचं नावृतं पुनर्विद्वान्पथः पुरएत ऋजु नेषति ॥१॥
रथमा नारिएको अश्वजस्तै भएर विद्वान् प्रतिक्षत्र यज्ञका धुरामा आफैँ खटेका छन्। हामी पनि उसै विघ्नहर्ता र रक्षा गर्ने यज्ञप्रति कर्तव्य निर्वाह गर्दछौँ। यस किसिमको भारी वहन गर्नबाट पन्छिने रहर हामी गर्दैनौँ, बरु बारम्बार थपियोस् भन्छौँ। हे मार्गको ज्ञान भएका देवता ! बाटको अगुवा भएर हामीलाई सोझो बाटो लैजाऊ।

अग्न इन्द्र वरुण मित्र देवाः शर्धः प्र यन्त मारुतोत विष्णो।
उभा नासत्या रुद्रो अध ग्नाः पूषा भगः सरस्वती जुषन्त ॥२॥
हे अग्नि, इन्द्र, वरुण, मित्र, मरुत् र विष्णु आदि देवताहरू हो ! हामीलाई सामर्थ्य प्रदान गर। अश्विनीकुमार, रुद्र, देवपत्नीहरू, पूषा, भग, सरस्वतीले हवि ग्रहण गरुन्।

इन्द्राग्नी मित्रावरुणादितिं स्वः पृथिवीं द्यां मरुतः पर्वताँ अपः।
हुवे विष्णुं पूषणं ब्रह्मणस्पतिं भगं नु शंसं सवितारमूतये ॥३॥

इन्द्र, अग्नि, मित्र, वरुण, अदिति, पृथ्वी, द्युलोक, आदित्य, मरुत्, पर्वत, जल, विष्णु, पूषा, ब्रह्मणस्पति, भगदेव र सविता आदि देवताहरूलाई हामी आह्वान गर्दछौं। उनीहरू यस यज्ञशालामा चाँडै आएर हाम्रो रक्षा गरुन्।

उत नो विष्णुरुत वातो अस्रिधो द्रविणोदा उत सोमो मयस्करत्।
उत ऋभव उत राये नो अश्विनोत त्वष्टोत विभ्वानु मंसते ॥४॥

विष्णुदेव, अहिंसक वायुदेव र धन प्रदाता सोमदेवले हामीलाई सबै खालको सुख प्रदान गरुन्। ऋभुगण, अश्विनीकुमार, त्वष्टा र विभुहरू आदि सबै देवताले हामीलाई ऐश्वर्य प्राप्तिका लागि अनुकूल प्रेरणा प्रदान गरुन्।

उत त्यन्नो मारुतं शर्ध आ गमद्दिविक्षयं यजतं बर्हिरासदे।
बृहस्पतिः शर्म पूषोत नो यमद्वरूथ्यं वरुणो मित्रो अर्यमा ॥५॥

स्वर्गमा रहने र पूजनीय मरुत्‌हरू हाम्रा यज्ञका कुशका आसनमा बस्न आऊन्। बृहस्पति पूषा, वरुण, मित्र र अर्यमादेवले हामीलाई सबै घरायसी सुख प्रदान गरुन्।

उत त्ये नः पर्वतासः सुशस्तयः सुदीतयो नद्यस्त्रामणे भुवन्।
भगो विभक्ता शवसावसा गमदुरुव्यचा अदितिः श्रोतु मे हवम् ॥६॥

उत्तम स्तुतिका लागि योग्य र दान दिने नदीहरू हामीलाई रक्षा गर्न तयार होऊन्। धन वितरण गर्ने भगदेव आफ्नो बल र संरक्षण साधनका साथ हामीकहाँ आऊन्। व्यापक प्रभायुक्त अदिति देवीले हाम्रो आह्वान सुनून्।

देवानां पत्नीरुशतीरवन्तु नः प्रावन्तु नस्तुजये वाजसातये।
याः पार्थिवासो या अपामपि व्रते ता नो देवीः सुहवाः शर्म यच्छत ॥७॥

इन्द्र आदि देवताका पत्नीहरू उत्साहित भएर हाम्रो रक्षा गरुन्। उनीहरूका संरक्षणमा हामीलाई पुत्र र अन्न लाभ होस्। यी देवीहरू चाहे पृथ्वीमा होऊन् या अन्तरिक्षमा वा द्युलोकमा, उत्तम आह्वान सुनेर हामीलाई सबै खालका सुख प्रदान गर्न आऊन्।

उत ग्ना व्यन्तु देवपत्नीरिन्द्राण्यग्नाय्यश्विनी राट्।
आ रोदसी वरुणानी शृणोतु व्यन्तु देवीर्य ऋतुर्जनीनाम् ॥८॥

सबै देवी र देवपत्नीहरूले हामीलाई रक्षा गरुन्। इन्द्राणी, अग्निपत्नी, दीप्तिमती, अश्विनी, रोदसी, वरुणपत्नी आदिले हामीलाई रक्षा गरुन्। यिनीहरूमध्ये ऋतु जन्माउने देवीले पनि हाम्रो स्तुति सुनून्।

## [सूक्त - ४७]

ऋषि - प्रतिरथ आत्रेय। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

प्रयुञ्जती दिव एति ब्रुवाणा मही माता दुहितुर्बोधयन्ती।
आविवासन्ती युवतिर्मनीषा पितृभ्य आ सदने जोहुवाना ॥१॥

स्तुत्य, अत्यन्त विस्तृत मातृरूपा उषादेवीले आफ्नी पुत्री पृथ्वीलाई चेतन गराउँछिन्। प्राणीहरूलाई आफ्ना कर्ममा लगाउँदै आकाशमा उषा प्रकट हुन्छिन्। सबैको सेवा गर्ने यी तरुणी उषा बुद्धिपूर्वक स्तोत्रले आवाहित हुँदाखेरि यज्ञशालामा पितृको रूपमा रहेका देवताहरूसित आउँछिन्।

अजिरासस्तदप ईयमाना आतस्थिवांसो अमृतस्य नाभिम्।
अनन्तास उरवो विश्वतः सीं परि द्यावापृथिवी यन्ति पन्थाः ॥२॥

निरन्तर यात्रामा रहने, प्रकाशित भएर कर्म सम्पन्न गर्ने अमृतरूपी सूर्यदेवका केन्द्रमा रहने रश्मिले सर्वत्र व्याप्त भएर अनन्त मार्गबाट द्यावापृथिवीको परिक्रमा गर्दछ।

उक्षा समुद्रो अरुषः सुपर्णः पूर्वस्य योनिं पितुरा विवेश।
मध्ये दिवो निहितः पृश्निरश्मा वि चक्रमे रजसस्पात्यन्तौ ॥३॥

समुद्रलाई जलले पूर्ण गराउने दीप्तिमान्, सुन्दर रश्मिका धनी सूर्यदेव आफ्नो पितृरूप आकाशका पूर्वी स्थानमा प्रविष्ट भए। विभिन्न खालका दीप्तिले युक्त उल्काजस्ता सूर्यदेव माझ आकाशमा घुम्दै अन्तरिक्षको रक्षा गर्दछन्।

चत्वार ईं बिभ्रति क्षेमयन्तो दश गर्भं चरसे धापयन्ते।
त्रिधातवः परमा अस्य गावो दिवश्चरन्ति परि सद्यो अन्तान् ॥४॥

कल्याणको कामना गर्दै चार ऋत्विक्हरूले दिएको हव्य सूर्यदेवले धारण गर्दछन्। दस दिशाहरू आफ्ना गर्भबाट उत्पन्न सूर्यदेवलाई गतिका निम्ति प्रेरित गर्दछन्। तीनै लोक भ्रमण गर्ने सूर्यदेवको उत्तम किरण द्रुतवेगले आकाशका सीमामा घुम्दछ।

इदं वपुर्निवचनं जनासश्चरन्ति यन्नद्यस्तस्थुरापः।
द्वे यदीं बिभृतो मातुरन्ये इहेह जाते यम्याऽ सबन्धू ॥५॥

हे मानिसहरू हो ! जसका कारण यी नदीहरू प्रवाहशील छन् र जल स्थिर रहन्छ, उनै सूर्यदेवको शरीर स्तुत्य छ। स्वयंबाट उत्पन्न भएकी माता पृथिवीका नियामक भएर सूर्यदेव बन्धुत्वभावले अरू दुई लोकलाई समेत धारण गर्दछन्।

वि तन्वते धियो अस्मा अपांसि वस्त्रा पुत्राय मातरो वयन्ति।
उपप्रक्षे वृषणो मोदमाना दिवस्पथा वध्वो यन्त्यच्छ ॥६॥

आमाले छोरालाई वस्त्र बुनिदिएझैं यजमानहरू यी सूर्यदेवका लागि स्तुति र यज्ञ आदि कर्मको रचना गर्दछन्। वर्षा गराउने सूर्यदेव प्रकट भएपछि यिनका पत्नीजस्ता रश्मि खुसी भएर आकाशमार्गबाट हामीकहाँ आउँछन्।

तदस्तु मित्रावरुणा तदग्ने शं योरस्मभ्यमिदमस्तु शस्तम्।
अशीमहि गाधमुत प्रतिष्ठां नमो दिवे बृहते सादनाय ॥७॥

हे मित्रावरुणदेव हो ! यो स्तोत्र तिमीहरूका लागि हो। हे अग्निदेव ! यो स्तोत्र हामीले सुख प्राप्त गर्नका लागि तिम्रा निम्ति हो। हामीलाई उत्तम स्थान र प्रतिष्ठा प्राप्त होस्। सबैका लागि राम्रो आश्रय दिने सूर्यदेवलाई हामी नमस्कार गर्दछौं।

[सूक्त - ४८]

ऋषि - प्रतिभानु आत्रेय। देवता - विश्वेदेवा। छन्द - जगती।

कदु प्रियाय धाम्ने मनामहे स्वक्षत्राय स्वयशसे महे वयम्।
आमेन्यस्य रजसो यदभ्र आँ अपो वृणाना वितनोति मायिनी ॥१॥

हामी आफ्नो बलका निम्ति, आफ्नो यशका निम्ति र आनन्ददायक महान् तेजका निम्ति कुन देवताको कसरी अर्चना गरौं। मायारूपी आवरण विस्तृत गर्ने शक्तिले सीमाविहीन अन्तरिक्षमा मेघमाथि जलराशि फैलाउँछ।

ता अत्नत वयुनं वीरवक्षणं समान्या वृतया विश्वमा रजः।
अपो अपाचीरपरा अपेजते प्र पूर्वाभिस्तिरते देवयुर्जनः ॥२॥

उषाले वीर पुरुषका कर्ममा उत्साह थपियो। एक समान रूपले प्रकाश छर्ने आवरणले सम्पूर्ण विश्व व्याप्त गरायो। देवत्वको कामना गर्ने मानिस आउन बाँकी र विगतका उषाहरूलाई छोडेर वर्तमान उषाका अगाडि नै आफ्ना कर्महरू फिंजाउँछन्।

आ ग्रावभिरहन्येभिरक्तुभिर्वरिष्ठं वज्रमा जिघर्ति मायिनि।
शतं वा यस्य प्रचरन्त्स्वे दमे संवर्तयन्तो वि च वर्तयन्नहा ॥३॥

सम्पूर्ण दिन र रातमा लगातार ढुङ्गाले पेलेका सोमद्वारा हर्षित भएर इन्द्रदेवले मायावी वृत्रमाथि आफ्नो उत्कृष्ट वज्रले प्रहार गरे। इन्द्ररूपी सूर्यदेवका सयौं किरण दिनका चक्रमा प्रवृत्त र निवृत्त हुँदै आफ्नो घररूपी आकाशमा घुमिरहन्छन्।

तामस्य रीतिं परशोरिव प्रत्यनीकमख्यं भुजे अस्य वर्पसः।
सचा यदि पितुमन्तमिव क्षयं रत्नं दधाति भरहूतये विशे ॥४॥

फर्साजस्तै धारिला अग्निदेवको स्वभाव हामी जान्दछौं। रूपवान्, आदित्यरूप अग्निका किरणसमूहको स्तुति हामी ऐश्वर्यको उपभोगका लागि गर्दछौं। अग्निदेव यज्ञस्थानका सहायक भएर यजमानलाई अन्नले पूरा गराउँदै घर र उत्तम रत्न प्रदान गर्दछन्।

स जिह्वया चतुरनीक ऋञ्जते चारु वसानो वरुणो यतन्नरिम्।
न तस्य विद्म पुरुषत्वता वयं यतो भगः सविता दाति वार्यम् ॥५॥

तेजरूपी सुन्दर ओढ्ने ओढेका अग्निदेव अन्धकाररूपी शत्रुलाई मार्दछन्। चारैतिर ज्वाला

फिँजाउँदै जिब्रारूपी ज्वालाले घिउ पान गर्दछन्। त्यसै बीच भग र सवितादेव रहर लाग्दो धन प्रदान गर्दछन्। अग्निदेवका धन र ऐश्वर्य दान गर्ने पराक्रमको जानकारी हामीलाई छैन।

[सूक्त - ४९]

**ऋषि** - प्रतिप्रभ आत्रेय। **देवता** - विश्वेदेवा। **छन्द** - त्रिष्टुप्।

**देवं वो अद्य सवितारमेषे भगं च रत्नं विभजन्तमायोः।**
**आ वां नरा पुरुभुजा ववृत्यां दिवेदिवे चिदश्विना सखीयन् ॥१॥**

हामी आज यजमानहरूका लागि सविता र भगदेवलाई बोलाउँछौं। किनभने तिनले दानशीललाई रत्न बाँड्दछन्। हे धेरै पदार्थ चलाउने, नेतृत्व गर्ने अश्विनीकुमारहरू हो ! मित्रताको रहरमा प्रत्येक दिन हामी तिमीहरू दुवैलाई बोलाउँछौं।

**प्रति प्रयाणमसुरस्य विद्वान्त्सूक्तैर्देवं सवितारं दुवस्य।**
**उप ब्रुवीत नमसा विजानञ्ज्येष्ठं च रत्नं विभजन्तमायोः ॥२॥**

हे स्तोताहरू हो ! तिमीहरू सबैले प्राणप्रदायक सवितादेव फिर्ता गएको थाहा पाएपछि उत्तम वचनले स्तुति गर। यजमानलाई राम्रो रत्न प्रदान गर्ने सवितादेवलाई चिनेर नमस्कारका साथ स्तुति गर।

**अदत्रया दयते वार्याणि पूषा भगो अदितिर्वस्त उस्रः।**
**इन्द्रो विष्णुर्वरुणो मित्रो अग्निरहानि भद्रा जनयन्त दस्माः ॥३॥**

पूषा, भग र अदिति यी देवदेवीहरू वरण गर्न योग्य हविष्यान्न ग्रहण गरेर त्यस्तै वरणीय अन्न यजमानलाई दिन्छन्। इन्द्र, विष्णु, मित्र र अग्नि आदि दर्शनीय देवताहरू हितकारी दिन उत्पन्न गराउँछन्।

**तन्नो अनर्वा सविता वरूथं तत्सिन्धव इषयन्तो अनु ग्मन्।**
**उप यद्वोचे अध्वरस्य होता रायः स्याम पतयो वाजरत्नाः ॥४॥**

हामी यज्ञका सम्पादक देवताहरूको स्तुति गर्दछौं। अपराजित सवितादेवले हामीलाई स्वीकारयोग्य धन दिऊन्। प्रवाहशील नदीहरूले पनि उस्तै धन प्रदान गरुन्। हामी ऐश्वर्यका अधिपति भएर अन्न र रत्नका धनी बनौं।

**प्र ये वसुभ्य ईवदा नमो दुर्ये मित्रे वरुणे सूक्तवाचः।**
**अवैत्वभ्वं कृणुता वरीयो दिवस्पृथिव्योरवसा मदेम ॥५॥**

जनु यजमानले वसुहरूलाई हवि प्रदान गर्दछन्, मित्र र वरुणदेवका लागि उत्तम सूक्त वचनले स्तुति गर्दछन्, हे देवताहरू हो ! उनीहरूलाई ऐश्वर्यले युक्त गराओ। हामी द्युलोक र पृथिवीलोकको संरक्षण पाएर खुसी होऔं।

[सूक्त - ५०]

**ऋषि** - स्वस्ति आत्रेय। **देवता** - विश्वेदेवा। **छन्द** - अनुष्टुप् पङ्क्ति।

**विश्वो देवस्य नेतुर्मर्तो वुरीत सख्यम्।**
**विश्वो राय इषुध्यति द्युम्नं वृणीत पुष्यसे ॥१॥**

सबै मानिसले प्रेरणादायी सवितादेवको मित्रता स्वीकार गर्दछन्। मानिसहरू आफ्नो पोषणका लागि दीप्तिमान् धन प्राप्त गर्दछन् र ऐश्वर्यका अधिपति हुन्छन्।

**ते ते देव नेतर्ये चेमाँ अनुशसे। ते राया ते ह्यापृचे सचेमहि सचथ्यैः ॥२॥**

हे अग्रणी देव ! जुन मानिस तिम्रो र अन्य देवताहरूको उपासना गर्दछन्, ती सबै तिम्रै हुन्। उनीहरू धनले सम्पन्न भएर रहर पूरा गर्दछन्।

**अतो न आ नॄनतिथीनतः पत्नीर्दशस्यत।**
**आरे विश्वं पथेष्ठां द्विषो युयोतु यूयुविः ॥३॥**

हे ऋत्विक्हरू हो ! तिमीहरू हाम्रा यस यज्ञमा अतिथिजस्तै पूज्य देवताहरूको सेवा गर। ती देवताका पत्नीहरूको पनि सेवा गर। विघ्ननाशक सवितादेवले हाम्रा बाटाका सबै विघ्न र शत्रुहरू हटाइदिऊन्।

**यत्र वह्निरभिहितो दुद्रवद्द्रोण्यः पशुः। नृमणा वीरपस्त्योऽर्णा धीरेव सनिता ॥**

जहाँ अग्नि स्थापित भइसकेपछि मौलोका नजिकै योग्य पशु हुन्छ, त्यहाँ यजमानहरू सवितादेवका कृपाले उत्साहपूर्ण मन र जहान परिवारसहितको घर पाउँछन्।

एष ते देव नेता रथस्पतिः शं रयिः।
शं राये शं स्वस्तय इषः स्तुतो मनामहे देवस्तुतो मनामहे ॥५॥

हे सर्वनियामक सवितादेव ! तिम्रो यो रथ ऐश्वर्यप्रदायक, सुखदाता र पालनकर्ता जस्तो छ। हामी स्तोताहरू सुखदायी ऐश्वर्य र सुखद कल्याणका लागि स्तुति गर्दछौं। देवताहरूको स्तुतिका साथ तिमीलाई पनि बारम्बार स्तुति गर्दछौं।

[सूक्त - ५१]

ऋषि - स्वस्ति आत्रेय। देवता - विश्वेदेवा। छन्द - गायत्री उष्णिक् जगती त्रिष्टुप्।

अग्ने सुतस्य पीतये विश्वैरूमेभिरा गहि। देवेभिर्हव्यदातये ॥१॥

हे अग्निदेव ! तिमी सोमरस पान गर्नका लागि सबै संरक्षक देवताहरूका साथ हव्य प्रदाता यजमानकहाँ आऊ।

ऋतधीतय आ गत सत्यधर्माणो अध्वरम्। अग्नेः पिबत जिह्वया ॥२॥

हे सत्य स्तुति गर्न योग्य देवताहरू हो ! हे सत्यलाई धारण गर्ने देवताहरू हो ! तिमीहरू हाम्रा यज्ञमा आओ। अग्निको जिब्रोरूपी ज्वालाले सोमरस वा घिउ पान गरोस्।

विप्रेभिर्विप्र सन्त्य प्रातर्यावभिरा गहि। देवेभिः सोमपीतये ॥३॥

हे मेधावी, सेवा गर्न योग्य अग्निदेव ! तिमी बिहान आउने ज्ञानी र देवताहरूका साथ सोम पान गर्नका लागि यहाँ आऊ।

अयं सोमश्चमू सुतोऽमत्रे परि षिच्यते। प्रिय इन्द्राय वायवे ॥४॥

ढुङ्गामा कुटेपछि पेलेर तयार भएको सोम छानेर भाँडामा भरिन्छ। त्यही सोम इन्द्र र वायुदेवले अत्यन्त रुचाउँछन्।

वायवा याहि वीतये जुषाणो हव्यदातये। पिबा सुतस्यान्धसो अभि प्रयः ॥५॥

हे वायुदेव ! सोमपान गर्नका लागि र हविदाता यजमानको खुसीका लागि तिमी हव्य प्राप्त गर्न आऊ। हविष्यान्न ग्रहण गर र निचोरेर तयार गरेको सोम पान गर।

इन्द्रश्च वायवेषां सुतानां पीतिमर्हथः। ताञ्जुषेथामरेपसावभि प्रयः ॥६॥

हे वायुदेव ! तिमी र इन्द्रदेव तयार पारेको यो सोम पान गर्न योग्य छौ। अहिंसक भएर तिमीहरू आओ र हव्यरूपी सोम सेवन गर।

सुता इन्द्राय वायवे सोमासो दध्याशिरः। निम्नं न यन्ति सिन्धवोऽभि प्रयः ॥

इन्द्र र वायुदेवका लागि दही मिसाइएको सोमरस तयार छ। हे इन्द्र र वायुदेव हो ! ओरालोतिर बग्ने नदीजस्तै यो हविष्यान्न तिमीहरूतिर आउँछ।

सजूर्विश्वेभिर्देवेभिरश्विभ्यामुषसा सजूः। आ याह्यग्ने अत्रिवत्सुते रण ॥८॥

हे अग्निदेव ! सबै देवताहरूसँग अश्विनीकुमारहरू र उषासँग प्रेमपूर्वक यज्ञमा आऊ। अत्रि ऋषि यज्ञमा खुसी भएझैं हामीले बनाएका सोमरसले तिमी खुसी होऊ।

सजूर्मित्रावरुणाभ्यां सजूः सोमेन विष्णुना। आ याह्यग्ने अत्रिवत्सुते रण ॥९॥

हे अग्निदेव ! मित्र, वरुण, तिमी र विष्णु सोमसहित हाम्रा यज्ञमा आऊ। अत्रि ऋषि यज्ञमा खुसी भएझैं हामीले बनाएका सोमरसले तिमी खुसी होऊ।

सजूरादित्यैर्वसुभिः सजूरिन्द्रेण वायुना। आ याह्यग्ने अत्रिवत्सुते रण ॥१०॥

हे अग्निदेव ! आदित्य, वसुहरू, इन्द्र र वायुसहित प्रेमभावले तिमी हाम्रा यज्ञमा आऊ। अत्रि ऋषि यज्ञमा खुसी भएझैं हामीले बनाएका सोमरसले तिमी खुसी होऊ।

स्वस्ति नो मिमीतामश्विना भगः स्वस्ति देव्यदितिरनर्वणः।
स्वस्ति पूषा असुरो दधातु नः स्वस्ति द्यावापृथिवी सुचेतुना ॥११॥

दुवै अश्विनीकुमारले हाम्रो हित गरुन्। भगदेवता र अदितिदेवीले हाम्रो कल्याण गरुन्। अपराजित र प्राणदाता पूषादेवले हाम्रो कल्याण गरुन्। उत्तम ज्ञानी द्यावापृथिवीले हाम्रो कल्याण गरुन्।

स्वस्तये वायुमुप ब्रवामहै सोमं स्वस्ति भुवनस्य यस्पतिः।
बृहस्पतिं सर्वगणं स्वस्तये स्वस्तय आदित्यासो भवन्तु नः ॥१२॥

हामी आफ्नो हितका लागि वायुदेवको स्तुति गर्दछौं। आफ्नो हितका लागि सम्पूर्ण भुवनका

अधिपति सोमको स्तुति गर्दछौं। सबै समूहका नेता बृहस्पतिदेवलाई हामी हितकै लागि स्तुति गर्दछौं। देवतास्वरूप आदित्यका पुत्र, देवतास्वरूप अरुण आदिका पुत्र द्वादशदेव हाम्रा लागि हितकारी होऊन्।

**विश्वे देवा नो अद्या स्वस्तये वैश्वानरो वसुरग्निः स्वस्तये।**
**देवा अवन्त्वृभवः स्वस्तये स्वस्ति नो रुद्रः पात्वंहसः ॥१३॥**

यस यज्ञमा सबै देवताले हाम्रा हितको रक्षक गरुन्। सम्पूर्ण विश्वका नियामक र आश्रयदाता अग्निदेव हाम्रो कल्याणका रक्षक होऊन्। दीप्तिमान् ऋभुहरू हाम्रो रक्षा गर्दै कल्याणकारी होऊन्। रुद्रदेवले हामीलाई पापबाट जोगाएर हित गरुन्।

**स्वस्ति मित्रावरुणा स्वस्ति पथ्ये रेवति।**
**स्वस्ति न इन्द्रश्चाग्निश्च स्वस्ति नो अदिते कृधि ॥१४॥**

हे मित्रावरुणदेव हो ! तिमीहरू हाम्रो कल्याण गर। हे मार्गप्रदर्शक र धनकी देवी ! तिमी हाम्रो कल्याण गर। इन्द्र र अग्निदेव हाम्रो कल्याण गरुन्। हे अदितिदेवी तिमी हाम्रो कल्याण गर।

**स्वस्ति पन्थामनु चरेम सूर्याचन्द्रमसाविव।**
**पुनर्ददताघ्नता जानता सं गमेमहि ॥१५॥**

हामी सूर्य र चन्द्रमाको जस्तै बाधारहित मार्गका अनुगामी होऔं। निरन्तर दान गरेर ज्ञानले युक्त हुँदै आपसी द्रोह र हिंसारहित भावमा हामी सुखपूर्वक सहयात्री बनौं।

## [सूक्त - ५२]

**ऋषि** – श्यावाश्व आत्रेय। **देवता** – मरुत्गण। **छन्द** – अनुष्टुप् पङ्क्ति।

**प्र श्यावाश्व धृष्णुयार्चा मरुद्भिर्ऋक्वभिः।**
**ये अद्रोघमनुष्वधं श्रवो मदन्ति यज्ञियाः ॥१॥**

हे श्यावाश्व ऋषि ! तिमी सङ्घर्षक शक्तिले सम्पन्न, स्तुत्य मरुत्हरूको अर्चना गर। यज्ञका लागि योग्य मरुत्हरू अहिंसक हविरूप अन्न धारण गरेर खुसी हुन्छन्।

**ते हि स्थिरस्य शवसः सखायः सन्ति धृष्णुया।**
**ते यामन्ना धृषद्विनस्त्मना पान्ति शश्वतः ॥२॥**

मरुत्हरू स्थायी बलका सहायक रूप हुन्। उनीहरू शत्रुमाथि आक्रमण गर्दछन्। भ्रमण गर्दै हाम्रा वीर पुत्रलाई विजयशील सामर्थ्य दिएर उनीहरूले सुरक्षा गर्दछन्।

**ते स्पन्द्रासो नोक्षणोऽति ष्कन्दन्ति शर्वरीः।**
**मरुतामधा महो दिवि क्षमा च मन्महे ॥३॥**

स्पन्दनयुक्त र वृष्टिकारक मरुत्गण रातलाई जित्दै अगाडि बढ्दछन्। हामी मरुत्हरूका आकाश र भूमिमा व्याप्त तेजलाई स्तुति गर्दछौं।

**मरुत्सु वो दधीमहि स्तोमं यज्ञं च धृष्णुया।**
**विश्वे ये मानुषा युगा पान्ति मर्त्यं रिषः ॥४॥**

आक्रामक सामर्थ्य युक्त मरुत्हरूलाई हामी स्तुति र यज्ञ साधन हव्य अर्पित गर्दछौं। मरुत्हरू मानवीय युगका हिंसकहरूबाट मरणशील मनुष्यलाई रक्षा गर्छन्।

**अर्हन्तो ये सुदानवो नरो असामिशवसः।**
**प्र यज्ञं यज्ञियेभ्यो दिवो अर्चा मरुद्भ्यः ॥५॥**

हे ऋत्विक्हरू हो ! जुन पूजनीय, उत्तम दानशील, असीम बलसम्पन्न, नेतृत्वकर्ता वीर छन्, यज्ञका लागि योग्य र प्रकाशक तिनै मरुत्हरूलाई यज्ञको साधनरूपी हविष्यान्न अर्पित गरेर विशिष्ट अर्चना गर।

**आ रुक्मैरा युधा नर ऋष्वा ऋष्टीरसृक्षत।**
**अन्वेनाँ अह विद्युतो मरुतो जज्झतीरिव भानुरर्त त्मना दिवः ॥६॥**

दीप्तिमान्, अलङ्कारले विभूषित, आयुध युक्त भएर महान् नेतृत्वकर्ता मरुत्गण विशेष शोभायमान हुन्छन्। यिनीहरू आफ्ना आयुधले मेघमाथि प्रहार गर्दछन्। विशेष शब्द गर्दै प्रवाहित नदीजस्तै विद्युत्ले मरुत्हरूको अनुगमन गर्दछ। दीप्तिमान् मरुत्हरूको तेज स्वयं प्रकट हुन्छ।

ये वावृधन्त पार्थिवा य उरावन्तरिक्ष आ।
वृजने वा नदीनां सधस्थे वा महो दिवः ॥७॥

पृथ्वीमा, विस्तृत अन्तरिक्षमा, नदीका प्रवाहमा, सङ्ग्राम क्षेत्रमा र महान् द्युलोकका माझमा रहने मरुत्‌हरू सबै किसिमले उन्नतिशील रहेका छन्।

शर्धो मारुतमुच्छंस सत्यशवसमृभ्वसम्।
उत स्म ते शुभे नरः प्र स्पन्द्रा युजत त्मना ॥८॥

सत्यका बलमा निरन्तर बढ्ने मरुत्‌हरूका उत्कृष्ट बलको स्तुति गरौं। स्पन्दनशील र नेतृत्वकर्ता मरुत्‌हरू प्रत्येक शुभ कार्यमा स्वयं लागेका हुन्छन्।

उत स्म ते परुष्ण्यामूर्णा वसत शुन्ध्यवः।
उत पव्या रथानामद्रिं भिन्दन्त्योजसा ॥९॥

मरुत्‌हरू परुष्णी नदीमा रहन्छन्। सबैलाई शुद्ध गराउने दीप्तिद्वारा स्वयं पूर्ण हुन्छन्। आफ्ना बलले रथका चक्र फ्याँक्दै यिनीहरूले पर्वत भत्काउँछन्।

आपथयो विपथयोऽन्तस्पथा अनुपथाः।
एतेभिर्मह्यं नामभिर्यज्ञं विष्टार ओहते ॥१०॥

जुन मरुत्‌हरू अघिल्लो बाटो, निश्चित बाटो, विभिन्न बाटा, भित्री वा गोप्य बाटो र अनुकूल बाटाहरूमा हिँड्छन्, त्यस बेला उनीहरू आपथयः, विपथयः अन्तपथाः र अनुपथाः भन्ने यी चारै नामबाट क्रमशः प्रसिद्ध हुन्छन्। तिनै मरुत्‌हरू हाम्रा लागि यज्ञको हविष्यान्न ल्याउँछन्।

अधा नरो न्योहतेऽधा नियुत ओहते।
अधा पारावता इति चित्रा रूपाणि दर्श्या ॥११॥

मरुत्‌हरू कहिले अगुवा भएर, कहिले सँगै लागेर, कहिले टाढा रहेर संसार धारण गर्दछन्। यसो हुँदा यिनीहरूका रूप विचित्र र रमाइला देखिन्छन्।

छन्दः स्तुभः कुभन्यव उत्समा कीरिणो नृतुः।
ते मे के चित्र तायव ऊमा आसन्दृशि त्विषे ॥१२॥

छन्दद्वारा स्तुति गर्ने र जलको खोजी गर्ने स्तोताहरूका निम्ति मरुत्‌हरूले जलप्रवाह प्रेरित गरे। तिनीमध्ये कतिपय मरुत्‌हरू तस्करझैं अदृश्य रहेर रक्षा गर्दथे भने कोही प्रत्यक्ष देखिएर उनीहरूलाई तेजस्वी बल प्रदान गर्दथे।

य ऋष्वा ऋष्टिविद्युतः कवयः सन्ति वेधसः।
तमृषे मारुतं गणं नमस्या रमया गिरा ॥१३॥

हे ऋषिहरू हो ! मरुत्‌गण विद्युत्‌रूपी हतियारले प्रकाशित हुन्छन् र महान् क्रान्तदर्शी मेधासम्पन्न पनि छन्। ती मरुत्‌हरूलाई हर्षदायक स्तुति र अभिवादन गर।

अच्छ ऋषे मारुतं गणं दाना मित्रं न योषणा।
दिवो वा धृष्णव ओजसा स्तुता धीभिरिषण्यत ॥१४॥

हे ऋषिहरू हो ! प्रिय मित्रसित गएझैं तिमीहरू हविष्यान्न लिएर मरुत्‌हरूका नजिक उपस्थित होओ। हे आक्रामक बलले शत्रु जित्ने मरुत्‌हरू हो ! तिमीहरू द्युलोक वा अन्य लोकबाट हाम्रा यज्ञमा आओ र स्तुति ग्रहण गर।

नू मन्वान एषां देवाँ अच्छा न वक्षणा।
दाना सचेत सूरिभिर्यामश्रुतेभिरञ्जिभिः ॥१५॥

स्तोताहरू मरुत्‌को स्तुति गरेपछि अन्य देवताहरूको स्तुति गर्दैनन्। ज्ञानसम्पन्न, शीघ्र गतिका, प्रसिद्ध र उत्तम फल प्रदायक मरुत्‌हरूबाट उनीहरू अभीष्ट दान पाउँछन्।

प्र ये मे बन्ध्वेषे गां वोचन्त सूरयः पृश्निं वोचन्त मातरम्।
अधा पितरमिष्मिणं रुद्रं वोचन्त शिक्वसः ॥१६॥

ज्ञानी र सामर्थ्यशाली मरुत्‌हरूले गाई र पृथ्वी हाम्रा आमाझैं हुन् तथा वेगशाली रुद्र हाम्रा पिता हुन् भनेर आफन्तहरूलाई जानकारी दिएका छन्।

**सप्त मे सप्त शाकिन एकमेका शता ददुः।**
**यमुनायामधि श्रुतमुद्राधो गव्यं मृजे नि राधो अश्व्यं मृजे ॥१७॥**

सात सात सङ्ख्यामा एकत्र भएका सक्षम मरुत्‌हरूले सयौं गाई र अश्व प्रदान गरुन्। उनीहरूले प्रदान गरेका गाईको समूह हामी यमुना नदीको किनारमा पवित्र गराउँछौं र अश्वरूपी धन पनि पवित्र गराउँछौं।

[सूक्त - ५३]

**ऋषि** - श्यावाश्व आत्रेय। **देवता** - मरुत्‌गण। **छन्द** - ककुप् अनुष्टुप् उष्णिक् गायत्री।

**को वेद जानमेषां को वा पुरा सम्नेष्वास मरुताम्। यद्युयुज्रे किलास्यः ॥१॥**

मरुत्‌हरूले रङ्गीबिरङ्गी मृग आफ्ना रथमा जोतेका बेलासम्म यिनीहरूको उत्पत्तिबारे कसलाई थाहा थियो र ? मरुत्‌हरूको जस्तै सुखमा को थियो र ?

**ऐतान्रथेषु तस्थुषः कः शुश्राव कथा ययुः।**
**कस्मै सस्रुः सुदासे अन्वापय इडाभिर्वृष्टयः सह ॥२॥**

मरुत्‌हरू रथमा बसेका छन् भन्ने कसलाई थाहा छ ? यिनीहरू कसरी यात्रा गर्दछन् ? यिनका रथको आवाज कसले सुनेको छ ? मित्ररूपी हितैषि, वर्षा गराउने मरुत्‌गण कुन यजमानका लागि धेरै अन्न लिएर ओर्लन्छन् ?

**ते म आहुर्य आययुरुप द्युभिर्विभिर्मदे।**
**नरो मर्या अरेपस इमान्पश्यन्निति ष्टुहि ॥३॥**

तेजस्वी सोमपानले हर्ष उत्पन्न गर्नका लागि मरुत्‌गण हाम्रा नजिकै उपस्थित भए। मरुत्‌हरूले आफू निर्दोष र नेतृत्वकर्ता मानिसका हितैषि भएको कुरो बताए। स्तोताले उनीहरूलाई स्तुति गरुन्।

**ये अञ्जिषु ये वाशीषु स्वभानवः स्रक्षु रुक्मेषु खादिषु। श्राया रथेषु धन्वसु ॥**

मरुत्‌हरू जुन दीप्तिले स्वयं अति प्रकाशमान हुन्छन्, त्यो दीप्ति अलङ्कारमा, आयुधमा, सुनका हारमा, चुराहरूमा, रथमा र धनुषमा हुन्छ। हामी उनीहरूलाई वन्दना गर्दछौं।

**युष्माकं स्मा रथाँ अनु मुदे दधे मरुतो जीरदानवः। वृष्टी द्यावो यतीरिव ॥५॥**

हे शीघ्र दान गर्ने मरुत्‌हरू हो ! तिमीहरू वर्षाझैं वेगपूर्वक सर्वत्र जान सक्ने र दीप्तिमान् छौ। तिमीहरूको रथ देखेर हामी खुसी हुन्छौं र वन्दना गर्दछौं।

**आ यं नरः सुदानवो ददाशुषे दिवः कोशमचुच्यवुः।**
**वि पर्जन्यं सृजन्ति रोदसी अनु धन्वना यन्ति वृष्टयः ॥६॥**

नेतृत्वकर्ता, उत्तम दान गर्ने दानी भएका, दीप्तिमान् हविदाता यजमानका लागि निधि जम्मा गरेर राख्छन्। त्यही निधि पानीको वर्षासरि हविदातालाई बाँड्ने मरुत्‌गण द्युलोक र पृथिवीमा व्यापक जलसँग मेघझैं सञ्चरित हुँदै वर्षा गराउँछन्।

**ततृदानाः सिन्धवः क्षोदसा रजः प्र सस्रुर्धेनवो यथा।**
**स्यन्ना अश्वा इवाध्वनो विमोचने वि यद्वर्तन्त एन्यः ॥७॥**

मेघ फुटेर गाईले दुध दिएझैं अमृतमय जलराशि अन्तरिक्षमा फैलिन्छ। त्यसले धर्ती सिञ्चित हुन्छ। द्रुतगामी अश्वझैं वेगपूर्वक बाटो सजिलो पार्दै नदीहरू बग्दछन्।

**आ यात मरुतो दिव आन्तरिक्षादमादुत। माव स्थात परावतः ॥८॥**

हे मरुत्‌हरू हो ! तिमीहरू सबै द्युलोकबाट, अन्तरिक्षबाट अथवा यसै लोकबाट यहाँ आओ। कतै दूर देशमा नबस।

**मा वो रसानितभा कुभा क्रुमुर्मा वः सिन्धुर्नि रीरमत्।**
**मा वः परि ष्ठात्सरयुः पुरीषिण्यस्मे इत्सुम्नमस्तु वः ॥९॥**

हे मरुत्‌हरू हो ! रसा, अनितभा, कुभा आदि नदीहरू र वेगले बग्ने सिन्धु नदीले हामीलाई नरोकून्। जलले परिपूर्ण सरयु नदीले हामीलाई नछेकोस्। हामी तिमीहरूबाट रक्षित भएर सुखमा रहौं।

**तं वः शर्धं रथानां त्वेषं गणं मारुतं नव्यसीनाम्। अनु प्र यन्ति वृष्टयः ॥१०॥**

रथको बल भएका तेजस्वी मरुत्‌हरूलाई हामी स्तवन गर्दछौं। मरुत्‌हरूका साथै वर्षा पनि वेगपूर्वक हिँड्दछ।

शर्धंशर्धं व एषां व्रातंव्रातं गणङ्गणं सुशस्तिभिः। अनु क्रामेम धीतिभिः ॥११॥

हे मरुत्‌हरू हो ! हामी तिमीहरूका प्रत्येक बल, समुदाय र प्रत्येक गणलाई स्तुति गर्दै अनुसरण गर्दछौं।

कस्मा अद्य सुजाताय रातहव्याय प्र ययुः। एना यामेन मरुतः ॥१२॥

आज मरुत्‌हरू यस रथबाट कुन हविदाता यजमान र कुन असल मान्छेकहाँ जान्छन् ?

येन तोकाय तनयाय धान्यं१ बीजं वहध्वे अक्षितम्।

अस्मभ्यं तद्धत्तन यद्व ईमहे राधो विश्वायु सौभगम् ॥१३॥

तिमीहरू जुन स्नेहालु हृदयले छोरानातिका लागि अक्षय धनधान्यको बिउ लिने गर्दछौ, त्यसै हृदयले हामीलाई पनि त्यो देओ। तिमीहरूसित हामी पूरा आयु र सौभाग्यपूर्ण ऐश्वर्यको माग गर्दछौं।

अतीयाम निदस्तिरः स्वस्तिभिर्हित्वावद्यमरातीः।

वृष्ट्वी शं योराप उस्रि भेषजं स्याम मरुतः सह ॥१४॥

हे मरुत्‌हरू हो ! हितकारी काम गरेर पापवृत्ति विनाश गर्दै आफ्ना शत्रु र गोप्य निन्दकलाई हामी पराजित गरौं। हामीलाई सम्पूर्ण शक्तिले युक्त सुख, जल र दीप्तिले युक्त औषधि एकै चोटि प्राप्त होऊन्।

सुदेवः समहासति सुवीरो नरो मरुतः स मर्त्यः। यं त्रायध्वे स्याम ते ॥१५॥

हे नेतृत्वकर्ता मरुत्‌हरू हो ! तिमीहरू जसको रक्षा गर्दछौ, त्यो मानिस ज्यादै तेजवान्, महिमायुक्त र उत्तम पुत्रपौत्रादिले युक्त हुनेछ। हामी पनि त्यस्तै अनुगृहीत होऔं।

स्तुहि भोजान्स्तुवतो अस्य यामनि रणन्गावो न यवसे।

यतः पूर्वां इव सखींरनु ह्वय गिरा गृणीहि कामिनः ॥१६॥

हे स्तोताहरू हो ! घाँस चर्न जाँदै गरेका गाईहरूभैं यजमानका यज्ञमा भोजन गर्न जान लागेका मरुत्‌हरूलाई स्तुति गर। किनभने ती पहिलेदेखि नै चिनिएका प्रिय मित्रभैं सुखदायी छन्। उनीहरूलाई नजिकै बोलाएर स्तुतिले प्रशंसित गर।

[सूक्त - ५४]

ऋषि - श्यावाश्व आत्रेय। देवता - मरुत्‌गण। छन्द - जगती त्रिष्टुप्।

प्र शर्धाय मारुताय स्वभानव इमां वाचमनजा पर्वतच्युते।

घर्मस्तुभे दिव आ पृष्ठयज्वने द्युम्नश्रवसे महि नृम्णमर्चत ॥१॥

हे यजमानहरू हो ! स्वयं प्रकाशित र पर्वत थर्काउने मरुत्‌हरूका बललाई प्रशंसा गर्नका लागि प्रयोग गरेको आफ्नो भनाइ सुन्दर बनाओ। अत्यन्त तेजसम्पन्न, सूर्यका रूपजस्ता, दीप्तिमान् यश भएका मरुत्‌हरूलाई याजकहरूले मनग्गे हविष्यान्न प्रदान गर्दै अर्चना गरुन्।

प्र वो मरुतस्तविषा उदन्यवो वयोवृधो अश्वयुजः परिज्रयः।

सं विद्युता दधति वाशति त्रितः स्वरन्त्यापोऽवना परिज्रयः ॥२॥

हे मरुत्‌हरू हो ! तिमीहरूको गण बलशाली, संसारको पोषण मानिएको जल प्रदान गर्ने, अन्न बढाउने, अश्वलाई रथमा नार्ने, चारै दिशामा गमन गर्ने खालको छ। तिमी विद्युत्‌सित सम्मिलित भएका बेला तीनै लोकलाई प्रकाशित गराउँछौ र गर्जना गर्दै पृथ्वीका चारै दिशामा यात्रा गरिरहने जलराशि बर्साउँछौ।

विद्युन्महसो नरो अश्मदिद्यवो वातत्विषो मरुतः पर्वतच्युतः।

अब्दया चिन्मुहुरा ह्रादुनीवृतः स्तनयदमा रभसा उदोजसः ॥३॥

बिजुलीजस्तो तेजसम्पन्न, नेतृत्वकर्ता, आयुधयुक्त, द्युतिसम्पन्न, वेगवान्, पर्वत थर्काउने, वज्र प्रहार गर्ने, गर्जनशक्तिले युक्त र उग्र बल भएका मरुत्‌गण बारम्बार जल प्रदान गर्नका लागि प्रकट हुन्छन्।

व्य१क्तून्रुद्रा व्यहानि शिक्वसो व्य१न्तरिक्षं वि रजांसि धूतयः।

वि यदज्राँ अजथ नाव ईं यथा वि दुर्गाणि मरुतो नाह रिष्यथ ॥४॥

हे रुद्रका समर्थ पुत्र मरुत्‌हरू हो ! रातदिन निरन्तर भ्रमण गरिराख। अन्तरिक्षका सबै लोकमा यात्रा गर। नदीमा नौका चलाएभैं विभिन्न प्रदेशमा तिमीहरू गमन गर। हे शत्रुलाई हप्काउने मरुत्‌हरू हो ! हामीलाई हिंसित नगर।

तद्वीर्यं वो मरुतो महित्वनं दीर्घं ततान सूर्यो न योजनम्।
एता न यामे अगृभीतशोचिषोऽनश्वदां यन्न्ययातना गिरिम् ॥५॥

हे मरुत्‌हरू हो ! सूर्यदेवले आफ्नो दीप्ति परसम्म फिँजाएझैं, पर्वतका परसम्म अश्व छरिएझैं तिमीहरूको महिमा र शक्ति स्तोताहरूले परसम्म प्रचार गर्दछन्।

अभ्राजि शर्धो मरुतो यदर्णसं मोषथा वृक्षं कपनेव वेधसः।
अध स्मा नो अरमतिं सजोषसश्चक्षुरिव यन्तमनु नेषथा सुगम् ॥६॥

हे विधाताजस्ता मरुत्‌हरू हो ! तिमीहरूको बल प्रशस्त उत्कर्षमा पुगेको छ। भयङ्कर आँधीजस्ता तिमीहरू रुखलाई पनि बटारेर फाल्दछौ। हे सधैं खुसी रहने मरुत्‌हरू हो ! बटुवाको आँखोझैं मार्गदर्शन गराउँदै उचित पथमा हामीलाई हिंडाओ।

न स जीयते मरुतो न हन्यते न स्रेधति न व्यथते न रिष्यति।
नास्य राय उप दस्यन्ति नोतय ऋषिं वा यं राजानं वा सुषूदथ ॥७॥

हे मरुत्‌हरू हो ! तिमीहरू राजा र ऋषिलाई सत्कार्यमा प्रेरित गर्दछौ। ती राजा वा ऋषि कसैसित पनि पराजित हुँदैनन् र हिंसित पनि हुँदैनन्। तिनलाई हानी, दुःख र बाधा पनि हुँदैन। तिनको ऐश्वर्य र संरक्षण सामर्थ्य कहिल्यै नाश हुँदैन।

नियुत्वन्तो ग्रामजितो यथा नरोऽर्यमणो न मरुतः कबन्धिनः।
पिन्वन्त्युत्सं यदिनासो अस्वरन्व्युन्दन्ति पृथिवीं मध्वो अन्धसा ॥८॥

नियुत नामका अश्वसहित ग्राम विजेता, नेतृत्वकर्ता, जलधारक मरुत्‌हरू अर्यमाजस्तै वेगवान् भएर गमन गर्दा शब्द निकाल्दछन्। उनीहरू वर्षाद्वारा जलको प्रवाह पूर्ण गराउँछन् र भूमिमा मधुर अन्न बढाउँछन्।

प्रवत्वतीयं पृथिवी मरुद्भ्यः प्रवत्वती द्यौर्भवति प्रयद्भ्यः।
प्रवत्वतीः पथ्या अन्तरिक्ष्याः प्रवत्वन्तः पर्वता जीरदानवः ॥९॥

भूमि मरुत्‌हरूका लागि खुला बाटोजस्तै छ। द्युलोक वेगपूर्वक गमनशील मरुत्‌हरूका लागि खुला बाटो नै हो। अन्तरिक्षका सम्पूर्ण पथ मरुत्‌हरूको लागि खुला छन्। मरुत्‌हरूका लागि मेघ पनि खुला भएकैले तुरुन्त वर्षा गराउँछन्।

यन्मरुतः सभरसः स्वर्णरः सूर्य उदिते मदथा दिवो नरः।
न वोऽश्वाः श्रथयन्ताह सिस्रतः सद्यो अस्याध्वनः पारमश्नुथ ॥१०॥

हे मरुत्‌हरू हो ! तिमीहरू एकै नासले भारी उठाएर द्युलोकलाई व्यवस्थित गर्दछौ। हे तेजस्वी नेतृत्वकर्ता मरुत्‌हरू हो ! सूर्यदेव उदाउँदा तिमीहरू खुसी हुन्छौ। निरन्तर गमनशील तिम्रा अश्वहरू थाक्दैनन्। तिमीहरू तीनै लोकका सबै बाटामा हिंड्दछौ।

अंसेषु व ऋष्टयः पत्सु खादयो वक्षःसु रुक्मा मरुतो रथे शुभः।
अग्निभ्राजसो विद्युतो गभस्त्योः शिप्राः शीर्षसु वितता हिरण्ययीः॥११॥

हे रथमा सजिएका मरुत्‌हरू हो ! काँधमा आयुध, खुट्टामा कल्ली, छातीमा सुन्दर हार, पाखुरामा अग्निजत्तिकै चम्किलो वज्र र टाउकामा सुनौलो टोपी तिमीहरूका छन्।

तं नाकमर्यो अगृभीतशोचिषं रुशत्पिप्पलं मरुतो वि धूनुथ।
समच्यन्त वृजनातित्विषन्त यत्स्वरन्ति घोषं विततमृतायवः ॥१२॥

हे पूजनीय मरुत्‌गण ! यात्रा गर्दाखेरि तिमीहरू दीप्तिमान् निर्बाध आकाश र तेजस्वी जल थर्काउँछौ। तिमीहरू आआफ्नो बल सङ्गठित गरेर अति तेजसम्पन्न हुन्छौ। पानी बर्साउने विचारले भयङ्कर गर्जना गर्दै झरी पर्ने घोषणा तिमीहरू गर्दछौ।

युष्मादत्तस्य मरुतो विचेतसो रायः स्याम रथ्यो३ वयस्वतः।
न यो युच्छति तिष्यो३ यथा दिवो३ स्मे रारन्त मरुतः सहस्रिणम् ॥१३॥

हे विशिष्ट ज्ञानले सम्पन्न मरुत्‌हरू हो ! तिमीहरूबाट दिइएका धनले हामी सम्पन्न होऔं, हामी रथ र ऐश्वर्यका धनी होऔं। हे मरुत्‌हरू हो ! हामीलाई आकाशमा रहेका नक्षत्रजस्तै कहिल्यै नाश नहुने हजारौं किसिमका धनले हर्षित गराओ।

**यूयं रयिं मरुतः स्पार्हवीरं यूयमृषिमवथ सामविप्रम्।**
**यूयमर्वन्तं भरताय वाजं यूयं धत्थ राजानं श्रुष्टिमन्त ॥१४॥**

हे मरुत्हरू हो ! हामीलाई चाहिएजति धन र सन्तान देऔ। तिमीहरू साम गान गर्ने विप्रलाई रक्षा गर्दछौ। तिमीहरू प्रजाको भरणपोषण गर्ने राजालाई अश्व, अन्न र ऐश्वर्यले मनग्गे सम्पन्न गराउँछौ।

**तद्वो यामि द्रविणं सद्यऊतयो येना स्वर्१ण ततनाम नॄँरभि।**
**इदं सु मे मरुतो हर्यता वचो यस्य तरेम तरसा शतं हिमाः ॥१५॥**

हे शीघ्र रक्षा गर्ने मरुत्हरू हो ! तिमीहरूसित हामी त्यस्तो धन र ऐश्वर्यको माग गर्दछौं, जसलाई हामी सूर्यरश्मिजत्तिकै बाँड्न सकौं। हे मरुत्हरू हो ! हाम्रो उत्तम स्तोत्र ग्रहण गर। हामी त्यसका बलले सय वर्षको जीवन पूर्ण उपयोग गरौं।

## [सूक्त - ५५]

ऋषि – श्यावाश्व आत्रेय। देवता – मरुत्गण। छन्द – जगती त्रिष्टुप्।

**प्रयज्यवो मरुतो भ्राजदृष्टयो बृहद्वयो दधिरे रुक्मवक्षसः।**
**ईयन्त अश्वैः सुयमेभिराशुभिः शुभं यातामनु रथा अवृत्सत ॥१॥**

विशेष यजनीय, दीप्तिमान् आयुधसम्पन्न, सुन्दर हारले वक्ष सजाएका मरुत्ण महान् बलसम्पन्न छन्। उचित रूपमा नियन्त्रण गरिएका वेगवान् अश्वमा यात्रा गर्दछन्। जल वर्षाजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूको अनुसरण गर्दछ।

**स्वयं दधिध्वे तविषीं यथा विद बृहन्महान्त उर्विया वि राजथ।**
**उतान्तरिक्षं ममिरे व्योजसा शुभं यातामनु रथा अवृत्सत ॥२॥**

हे मरुत्हरू हो ! तिमीहरू ज्ञानअनुसारको बल स्वतः धारण गर्दछौ। जमिन उर्वर बनाउने तिमीहरूको सामर्थ्य अत्यन्त महान् र अत्यन्तै प्रकाशमान छ। तिमीहरूका बलले अन्तरिक्षलाई पूर्ण गराउँछ। जल वर्षाजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूको अनुसरण गर्दछ।

**साकं जाताः सुभ्वः साकमुक्षिताः श्रिये चिदा प्रतरं वावृधुर्नरः।**
**विरोकिणः सूर्यस्येव रश्मयः शुभं यातामनु रथा अवृत्सत ॥३॥**

मरुत्हरू सबै सँगै जन्मेका हुन् र सँगै जल बर्साउँछन्। सँगै बल उत्पादन र नेतृत्व गर्दछन्। अत्यन्तै राम्रो शोभाले यिनीहरूको वृद्धि हुन्छ। सूर्यको रश्मिझैं विशिष्ट आभाले युक्त छन्। जल वर्षाजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूको अनुसरण गर्दछ।

**आभूषेण्यं वो मरुतो महित्वनं दिदृक्षेण्यं सूर्यस्येव चक्षणम्।**
**उतो अस्माँ अमृतत्वे दधातन शुभं यातामनु रथा अवृत्सत ॥४॥**

हे मरुत्हरू हो ! तिमीहरूको सूर्यदेवजस्तै सुन्दर र विशिष्ट महत्त्व स्तोत्रले विभूषित हुन्छ। हामीलाई अमरता प्रदान गर। जल वर्षा आदिजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूकै अनुसरण गर्दछ।

**उदीरयथा मरुतः समुद्रतो यूयं वृष्टिं वर्षयथा पुरीषिणः।**
**न वो दस्रा उप दस्यन्ति धेनवः शुभं यातामनु रथा अवृत्सत ॥५॥**

हे जलसम्पन्न मरुत्हरू हो ! तिमीहरू अन्तरिक्षबाट समुद्रका जललाई प्रेरित गर्दछौ र जल बर्साउन थाल्दछौ। हे शत्रुसंहारक मरुत्हरू हो ! तिमीहरूका लागि गरिने स्तुति कहिल्यै नाश हुँदैन। जल वर्षा आदिजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूकै अनुसरण गर्दछ।

**यदश्वान्धूर्षु पृषतीरयुग्ध्वं हिरण्ययान्प्रत्यत्काँ अमुग्धवम्।**
**विश्वा इत्स्पृधो मरुतो व्यस्यथ शुभं यातामनु रथा अवृत्सत ॥६॥**

हे मरुत्हरू हो ! तिमीहरूले विभिन्न विचित्र रङ्गका अश्व रथमा नारेर सुनौलो कवच लगाएपछि जोरी खोज्न आउने शत्रुलाई क्षतविक्षत गराउँछौ। जल वर्षा आदिजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूकै अनुसरण गर्दछ।

**न पर्वता न नद्यो वरन्त वो यत्राचिध्वं मरुतो गच्छथेदु तत्।**
**उत द्यावापृथिवी याथना परि शुभं यातामनु रथा अवृत्सत ॥७॥**

हे मरुत्हरू हो ! पर्वत र नदीहरूले तिमीहरूको बाटो नछेकून्। तिमीहरू जान रुचाएका ठाउँतिर

जाओ। द्यावापृथिवीमा सर्वत्र गमन गर। जल वर्षा आदिजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूकै अनुसरण गर्दछ।

**यत्पूर्व्यं मरुतो यच्च नूतनं यदुद्यते वसवो यच्च शस्यते।**
**विश्वस्य तस्य भवथा नवेदसः शुभं यातामनु रथा अवृत्सत ॥८॥**

सबैमा र सबैतिर रहने हे मरुत्हरू हो ! पहिले जेजति यज्ञ आदि अनुष्ठान गरिए, जेजति हाल भइरहेका छन् ती सबैमा भएका मन्त्रगान र स्तोत्रपाठ तिमीहरूलाई थाहा भएकै छन्। जल वर्षा आदिजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूकै अनुसरण गर्दछ।

**मृडत नो मरुतो मा वधिष्टनास्मभ्यं शर्म बहुलं वि यन्तन।**
**अधि स्तोत्रस्य सख्यस्य गातन शुभं यातामनु रथा अवृत्सत ॥९॥**

हे मरुत्हरू हो ! हामीलाई सुखी बनाओ। आफ्ना क्रोधले नष्ट नगर, सुख प्रदान गर। हाम्रा मित्रभावले युक्त स्तोत्र चिन। जल वर्षा आदिजस्ता हितकारी कार्यमा हिँड्ने मरुत्हरूका रथले उनीहरूकै अनुसरण गर्दछ।

**यूयमस्मान्नयत वस्यो अच्छा निरंहतिभ्यो मरुतो गृणानाः।**
**जुषध्वं नो हव्यदातिं यजत्रा वयं स्याम पतयो रयीणाम् ॥१०॥**

हे स्तुत्य मरुत्हरू हो ! हामीलाई तिमीहरू पापबाट मुक्त गराओ र ऐश्वर्ययुक्त स्थानतर्फ लैजाओ। हे यजनीय मरुत्हरू हो ! हामीबाट प्रदान गरिएको हव्य आदि पदार्थ ग्रहण गर, जसले गर्दा हामीहरू विविध ऐश्वर्यका स्वामी हुन सकौं।

[सूक्त – ५६]

**ऋषि** – श्यावाश्व आत्रेय। **देवता** – मरुत्गण। **छन्द** – बृहती सतोबृहती।

**अग्ने शर्धन्तमा गणं पिष्टं रुक्मेभिरञ्जिभिः।**
**विशो अद्य मरुतामव ह्वये दिवश्चिद्रोचनादधि ॥१॥**

हे अग्निदेव ! दीप्तिमान् अलङ्कारले विभूषित, शत्रु संहारक वीर मरुत्गण र उनका प्रजालाई बोलाइदेऊ। हामी देदीप्यमान द्युलोकबाट उनीहरूलाई आह्वान गर्दछौं।

**यथा चिन्मन्यसे हृदा तदिन्मे जग्मुराशसः।**
**ये ते नेदिष्ठं हवनान्यागमन्तान्वर्ध भीमसन्दृशः ॥२॥**

हे अग्निदेव ! मरुत्हरूका हृदयमा पूज्य मानिएझैं हाम्रा सम्मानित भावका कारण हाम्रा नजिकै आऊ। हाम्रा यज्ञनजिकै आउँदा विकराल स्वरूप हुने मरुत्हरूलाई तिमी हव्यद्वारा सेवा गर।

**मीळ्हुष्मतीव पृथिवी पराहता मदन्त्येत्यस्मदा।**
**ऋक्षो न वो मरुतः शिमीवाँ अमो दुध्रो गौरिव भीमयुः ॥३॥**

पृथ्वी प्राप्तिका निम्ति प्रभावित भएको मानिस सक्षमका पछि लागेझैं मरुत्को सेना खुसी हुँदै हामीतिर आउँदै छ। हे मरुत्हरू हो ! तिमीहरू सेचनका लागि साँढेजत्तिकै समर्थ र विशिष्ट सामर्थ्यवान् छौ।

**नि ये रिणन्त्योजसा वृथा गावो न दुर्धुरः।**
**अश्मानं चित्स्वर्यं पर्वतं गिरिं प्र च्यावयन्ति यामभिः ॥४॥**

डर लाग्दो साँढेजस्ता मरुत्हरू आफ्ना बलले सुगमतापूर्वक शत्रु विनाश गर्दछन्। गर्जन गर्दै हिँड्ने मरुत्हरू आफ्ना प्रहारले मेघलाई टुक्राटुक्रा पार्दै वर्षा गराउँछन्।

**उत्तिष्ठ नूनमेषां स्तोमैः समुक्षितानाम्।**
**मरुतां पुरुतममपूर्व्यं गवां सर्गमिव ह्वये ॥५॥**

हे मरुत्हरू हो ! अब उठ। स्तोत्रले निश्चय पनि समृद्ध भएका तिमीहरूको सबैभन्दा ठूलो अपूर्व बललाई हामी वन्दना गर्दछौं।

**युङ्ग्ध्वं ह्यरुषी रथे युङ्ग्ध्वं रथेषु रोहितः।**
**युङ्ग्ध्वं हरी अजिरा धुरि वोळ्हवे वहिष्ठा धुरि वोळ्हवे ॥६॥**

हे मरुत्हरू हो ! तिमीहरू आफ्ना रथमा राता रङ्गका मृग बाँध अथवा सिँदुरे रङ्गका मृग बाँध अथवा वेगवान्, बोक्ने कामका लागि सक्षम अश्व बाँध र भ्रमणशील धुरा भएको त्यो रथ तान्न लगाओ।

उत स्य वाज्यरुषस्तुविष्वणिरिह स्म धायि दर्शतः।
मा वो यामेषु मरुतश्चिरं करत्प्र तं रथेषु चोदत ॥७॥

हे मरुत्हरू हो ! रक्तिम आभाले युक्त, ठूलो शब्द गर्ने, हेर्नमा राम्रो अश्व बाँधिसकेपछि यात्रामा ढिलो नगराउने गरी त्यसलाई धपाओ।

रथं नु मारुतं वयं श्रवस्युमा हुवामहे।
आ यस्मिन्तस्थौ सुरणानि बिभ्रती सचा मरुत्सु रोदसी ॥८॥

हामी अन्नले भरिएको मरुत्हरूका रथलाई आह्वान गर्दछौं। त्यसमा उत्तम, सुन्दर द्रव्य धारण गरेकी मरुत्हरूकी माता बसेकी हुन्छिन्।

तं वः शर्धं रथेशुभं त्वेषं पनस्युमा हुवे।
यस्मिन्त्सुजाता सुभगा महीयते सचा मरुत्सु मीळ्हुषी ॥९॥

मरुत्हरूका रथमा विराजमान त्यस्ता तेजस्वी र स्तुत्य सङ्घ शक्तिलाई हामी आह्वान गर्दछौं, जसमा सुजाता र सौभाग्यवतीजस्ता कल्याणकारिणी देवीहरू मरुत्हरूसँगै महत्त्वपूर्ण रूपमा बसेका हुन्छन्।

## [सूक्त - ५७]

**ऋषि** - श्यावाश्व आत्रेय। **देवता** - मरुत्गण। **छन्द** - जगती त्रिष्टुप्।

आ रुद्रास इन्द्रवन्तः सजोषसो हिरण्यरथाः सुविताय गन्तन।
इयं वो अस्मत्प्रति हर्यते मतिस्तृष्णजे न दिव उत्सा उदन्यवे ॥१॥

इन्द्रका अनुचर, समान प्रीति भएका, स्वर्णिम रथमा चढ्ने, रुद्रका पुत्रजस्ता हे मरुत्हरू हो ! तिमीहरू हाम्रा यस उद्देश्यपूर्ण यज्ञमा आओ। तिमीहरूका लागि हामी बुद्धिपूर्वक स्तवन गर्दछौं। हे तेजस्वी मरुत्हरू हो ! तिर्खाएर पानीको खोजीमा लागेका गौतमका लागि तिमीहरूले जलको प्रवाह प्रदान गरेझैं कृपा हामीलाई गर।

वाशीमन्त ऋष्टिमन्तो मनीषिणः सुधन्वान इषुमन्तो निषङ्गिणः।
स्वश्वाः स्थ सुरथाः पृश्निमातरः स्वायुधा मरुतो याथना शुभम् ॥२॥

हे मेधावी मरुत्हरू हो ! तिमीहरू बन्चरो लिएका, भाला लिएका, दह्रो धनुषबाण लिएका, ठोक्रो भिरेका, गतिला अश्वमा चढेका र बलिया हतियारले सम्पन्न छौ। हाम्रो हित गर्नका लागि तिमीहरू आओ।

धूनुथ द्यां पर्वतान्दाशुषे वसु नि वो वना जिहते यामनो भिया।
कोपयथ पृथिवीं पृश्निमातरः शुभे यदुग्राः पृषतीरयुग्ध्वम् ॥३॥

हे मरुत्हरू हो ! तिमीहरू अन्तरिक्षमा मेघलाई कम्पित गराओ। हविदाता यजमानलाई धन प्रदान गर। तिमीहरू आउँदा वन पनि डरले कम्पित हुन्छ। हे मातृरूपी पृथ्वीका पुत्रहरू हो ! जल वर्षा आदि शुभ कार्यका लागि छिर्के मृगलाई रथमा जोतेर तिमीहरू उग्र रूप धारण गर्दछौ। त्यस बेला तिमीहरूका क्रोधले पृथ्वी पनि आत्तिन्छ।

वातत्विषो मरुतो वर्षनिर्णिजो यमाइव सुसदृशः सुपेशसः।
पिशङ्गाश्वा अरुणाश्वा अरेपसः प्रत्वक्षसो महिना द्यौरिवोरवः ॥४॥

यी वीर मरुत्हरू अत्यन्त तेजस्वी, वर्षाको बल छेक्ने, जुम्ल्याहाजस्ता, हेर्नमा राम्रा र अति गतिलो रूप भएका छन्। यिनीहरू विभिन्न वर्णका अश्वले युक्त, निष्पाप र शत्रुविनाशक हुन्। आफ्ना महत्ताले यी आकाशजस्तै विस्तृत छन्।

पुरुद्रप्सा अञ्जिमन्तः सुदानवस्त्वेषसन्दृशो अनवभ्रराधसः।
सुजातासो जनुषा रुक्मवक्षसो दिवो अर्का अमृतं नाम भेजिरे ॥५ ॥

मनग्गे जल बर्साउने, अलङ्कारले विभूषित, दानशील, तेजयुक्त मूर्तिमान्, अक्षय धनले सम्पन्न सफल जन्म पाएका, हारले गला सजाएका, पूजनीय दीप्तिमान् मरुत्हरू आआफ्ना शुभ कर्मले अमर कीर्ति पाउँछन्।

ऋष्टयो वो मरुतो अंसयोरधि सह ओजो बाह्वोर्वो बलं हितम्।
नृम्णा शीर्षस्वायुधा रथेषु वो विश्वा वः श्रीरधि तनूषु पिपिशे ॥६॥

हे मरुत्हरू हो ! तिमीहरूले काँधमा भाला राखेका छौ। तिमीहरूका दुवै भुजामा शत्रुसित जुध्ने बल छ। शिरमा राम्रो मुकुट र रथमा सम्पूर्ण हतियार तयार छन्। शरीर विशिष्ट कान्तिले युक्त छ।

गोमदश्वावद्रथवत्सुवीरं चन्द्रवद्राधो मरुतो ददा नः ।
प्रशस्तिं नः कृणुत रुद्रियासो भक्षीय वोऽवसो दैव्यस्य ॥७॥

हे मरुत्हरू हो ! हामीलाई गाई, अश्व, रथ, उत्तम पुत्र र स्वर्णसहित अन्न प्रदान गर। हे रुद्रका पुत्रहरू हो ! हाम्रो समृद्धि बढाओ। हामी तिमीहरूको दिव्य संरक्षण शक्तिको उपभोग गरौं।

हये नरो मरुतो मृडता नस्तुवीमघासो अमृता ऋतज्ञाः ।
सत्यश्रुतः कवयो युवानो बृहद् गिरयो बृहदुक्षमाणाः ॥८॥

हे मरुत्हरू हो ! हामीलाई सुखले परिपूर्ण गराओ। तिमीहरू नेतृत्वकर्ता, अकुत धनले सम्पन्न, अविनाशी, यज्ञका ज्ञाता, वास्तविक ख्यातिले सम्पन्न, सम्पूर्ण ज्ञानका भण्डार, सधैंका युवा, प्रचण्ड बलवान् र सर्वत्र स्तुति गरिने खालका छौ।

[सूक्त - ५८]

ऋषि – श्यावाश्व आत्रेय। देवता – मरुत्गण। छन्द – त्रिष्टुप्।

तमु नूनं तविषीमन्तमेषां स्तुषे गणं मारुतं नव्यसीनाम्।
य आश्वश्वा अमवद्वहन्त उतेशिरे अमृतस्य स्वराजः ॥१॥

बलसम्पन्न, स्तुत्य मरुत्हरूको हामी निश्चय नै स्तुति गरौं। मरुत्हरू द्रुतगामी अश्वका स्वामी, वेगपूर्वक गमन गर्ने र अमृतका शासक हुन्।

त्वेषं गणं तवसं खादिहस्तं धुनिव्रतं मायिनं दातिवारम्।
मयोभुवो ये अमिता महित्वा वन्दस्व विप्र तुविराधसो नॄन् ॥२॥

हे ज्ञानी पुरुषहरू हो ! तेजस्वी, बलसम्पन्न, हातमा चुरा लगाउने, शत्रु थर्काउने, कुशल वीर, धन प्रदाता मरुत्हरूलाई स्तुति गर। उनीहरू अत्यन्त सुखदायक, महत्त्वपूर्ण, अत्यन्त सामर्थ्यवान् र विपुल ऐश्वर्यका स्वामी हुनाले तिनको वन्दना गर।

आ वो यन्तूदवाहासो अद्य वृष्टिं ये विश्वे मरुतो जुनन्ति।
अयं यो अग्निर्मरुतः समिद्ध एतं जुषध्वं कवयो युवानः ॥३॥

वर्षाका प्रेरक, जललाई आह्वान गर्ने सबै मरुत्हरू हामीतिर आऊन्। हे तरुण र ज्ञानी मरुत्हरू हो ! तिमीहरू प्रज्वलित अग्निबाट हव्य आदि पदार्थ प्रेमपूर्वक ग्रहण गर।

यूयं राजानमिर्यं जनाय विभ्वतष्टं जनयथा यजत्राः ।
युष्मदेति मुष्टिहा बाहुजूतो युष्मत्सदश्वो मरुतः सुवीरः ॥४॥

हे यज्ञ गर्न योग्य मरुत्हरू हो ! तिमीहरूले दुनियाँको हितका लागि यजमान प्राप्त गराएको पुत्र तेजस्वी, शत्रुसंहारक र क्षमतावान् होस्। हे मुड्की युद्धमा बाहुबल प्राप्त गर्ने मरुत्हरू हो ! तिमीहरूबाट अश्वका नियन्ताले उपयुक्त पुत्र प्राप्त गर्दछन्।

अरा इवेदचरमा अहेव प्रप्र जायन्ते अकवा महोभिः ।
पृश्नेः पुत्रा उपमासो रभिष्ठाः स्वया मत्या मरुतः सं मिमिक्षुः ॥५॥

पाङ्ग्राका गजजस्ता सबै मरुत्हरू एकै नासका देखिन्छन्। यी अवर्णनीय मरुत्हरू दिनजस्तै महान् तेजस्वी भएर एक समान रूपमा प्रकट हुन्छन्। यी भूमिपुत्र मरुत्हरू एकै महिनामा जन्मिएका हुन्। अत्यन्त वेगवान् मरुत्हरू मिलेपछि स्वचालित वर्षा आदिले आआफ्नो काम गर्दछन्।

यत्प्रायासिष्ट पृषतीभिरश्वैर्वीळुपविभिर्मरुतो रथेभिः ।
क्षोदन्त आपो रिणते वनान्यवोस्रियो वृषभः क्रन्दतु द्यौः ॥६॥

हे मरुत्हरू हो ! छिर्के अश्व र बलिया पाङ्ग्रा जडिएको रथमा तिमीहरू आउँछौ। त्यस बेला जलराशि आत्तिएर बर्सिने गर्दछ। वनको नाश हुन्छ र सूर्यका रश्मियुक्त बर्सिने मेघसँगै आकाश पनि भीषण शब्दले गर्जिन थाल्दछ।

प्रथिष्ट यामन्पृथिवी चिदेषां भर्तेव गर्भं स्वमिच्छवो धुः ।
वातान्ह्यश्वान्धुर्यायुयुज्रे वर्षं स्वेदं चक्रिरे रुद्रियासः ॥७॥

मरुत्हरू आउँदा पृथ्वी उर्वर हुन्छ। पतिद्वारा पत्नीलाई गर्भ स्थापना गराइएझैं मरुत्हरू आफ्ना बलले वर्षाको पानी भूमिमा झार्दछन्। रुद्रपुत्र मरुत्हरू आफ्ना द्रुतगामी अश्व रथका अघिल्ला भागमा बाँधेर पराक्रमपूर्वक वर्षा गराउने कार्य सम्पन्न गर्दछन्।

हये नरो मरुतो मृळता नस्तुवीमघासो अमृता ऋतज्ञाः।
सत्यश्रुतः कवयो युवानोबृहद् गिरयो बृहदुक्षमाणाः ॥८॥

हे मरुत्हरू हो ! हामीलाई सुखले परिपूर्ण गराओ। तिमीहरू नेतृत्वकर्ता, प्रशस्त धनले सम्पन्न, अविनाशी, सत्यका ज्ञाता, सत्य यशले सम्पन्न, अत्यन्त ज्ञान सम्पन्न, सधैंका युवा, प्रशस्त बलवान् र सर्वत्र स्तुति गरिने हौ।

[सूक्त - ५९]

ऋषि - श्यावाश्व आत्रेय। देवता - मरुत्गण। छन्द - जगती त्रिष्टुप्।

प्र वः स्पळक्रन्त्सुविताय दावनेऽर्चा दिवे प्र पृथिव्या ऋतं भरे।
उक्षन्ते अश्वान्तरुषन्त आ रजोऽनु स्वं भानुं श्रथयन्ते अर्णवैः ॥१॥

हे मरुत्हरू हो ! आफ्नो कल्याणका लागि हविदाता यजमान यजन कर्म प्रारम्भ गर्दै छन्। हे याजकहरू हो ! तिमीहरू द्युलोकको पूजा गर। हामी पृथ्वीमाताका लागि स्तोत्र गाउँछौं। मरुत्हरू आफ्ना अश्व प्रेरित गर्दै अन्तरिक्षमा परसम्म यात्रा गर्छन्। उनीहरू आफ्ना तेजले मेघको विद्युत् विस्तृत गराउँछन्।

अमादेषां भियसा भूमिरेजति नौर्न पूर्णा क्षरति व्यथिर्यती।
दूरेदृशो ये चितयन्त एमभिरन्तर्महे विदथे येतिरे नरः ॥२॥

मानिसले भरिएको नौका नदीका बीचमा डल्पलिएझैं मरुत्हरूका बलले भयभीत पृथ्वी काँप्दछ। मरुत्हरू टाढा देखिने भए पनि यिनको गति थाहा पाइन्छ। यी नेतृत्वकर्ता मरुत्हरू अन्तरिक्षका माझमा अधिक हव्य ग्रहण गर्ने प्रयास गर्दछन्।

गवामिव श्रियसे शृङ्गमुत्तमं सूर्यो न चक्षू रजसो विसर्जने।
अत्या इव सुभ्वश्चारवः स्थन मर्या इव श्रियसे चेतथा नरः ॥३॥

हे मरुत्हरू हो ! तिमीहरू गाईका सिङजस्तै सुन्दर गहना शिरमा लगाउँछौ। अन्धकार हटाउने सूर्यको रश्मिजस्तै तिमीहरू किरण छर्दछौ। द्रुतगामी अश्वजस्तै वेगवान् र उत्तम आभाले युक्त भएर दर्शनीय छौ। तिमीहरू मानिसझैं यज्ञ कर्मका ज्ञाता हौ।

को वो महान्ति महतामुदश्नवत्कस्काव्या मरुतः को ह पौंस्या।
यूयं ह भूमिं किरणं न रेजथ प्र यद्भरध्वे सुविताय दावने ॥४॥

हे मरुत्हरू हो ! तिमीहरूको जस्तो महत्त्व कसको होला ? तिमीहरूका लागि कसले स्तोत्र रचना गर्न सक्ला ? को तिमीहरूजस्तो पोषण सामर्थ्यले सम्पन्न होला ? हे मरुत्हरू हो ! तिमीहरू असल हविदाता यजमानका हविष्यान्नले परिपूर्ण भएपछि वर्षा गराएर किरणले झैं धर्तीलाई थकाउँछौ।

अश्वाइवेदरुषासः सबन्धवः शूराइव प्रयुधः प्रोत युयुधुः।
मर्याइव सुवृधो वावृधुर्नरः सूर्यस्य चक्षुः प्र मिनन्ति वृष्टिभिः ॥५॥

मरुत्हरू अश्वजस्तै तेजस्वी छन्। दाजुभाइजस्तै प्रीतिपूर्ण र संयुक्त छन्। विशिष्ट योद्धा वीरझैं वर्षा आदि कामसित घमासान लडाईं गर्दछन्। मानिसजस्तै यी मरुत्हरू राम्ररी बढ्दछन्। यिनीहरू वर्षा गराएर सूर्यको तेज पनि मधुरो पारिदिन्छन्।

ते अज्येष्ठा अकनिष्ठास उद्भिदोऽमध्यमासो महसा वि वावृधुः।
सुजातासो जनुषा पृश्निमातरो दिवो मर्या आ नो अच्छा जिगातन ॥६॥

मरुत्हरूमा कुनै जेठोकान्छो या माहिलोसाँहिलो छैनन्। सबै उत्तिकै तेजसम्पन्न छन्। यिनले मेघ फोर्दछन्। यिनीहरू शुभ साइतमा जन्मेका हुन्। मातारूपी पृथ्वीका पुत्रहरू र मानवका हितैषि पनि हुन्। यस्ता दीप्तिमान् मरुत्हरू हामीतिर आऊन्।

वयो न ये श्रेणीः पप्तुरोजसान्तान्दिवो बृहतः सानुनस्परि।
अश्वास एषामुभये यथा विदुः प्र पर्वतस्य नभनूँरचुच्यवुः ॥७॥

हे मरुत्हरू हो ! तिमीहरू लहरै उड्ने चराझैं एकसमान रूपमा मिलेर बलपूर्वक आकाशको सीमासम्म र विस्तृत पर्वतका टाकुरासम्म यात्रा गर्दछौ। तिमीहरूका अश्वले मेघ टुक्र्याएर वर्षा गराउँछ। तिमीहरूका कर्म देवता र मानिस सबैले जानेका छन्।

मिमातु द्यौरदितिर्वीतये नः सं दानुचित्रा उषसो यतन्ताम्।
आचुच्यवुर्दिव्यं कोशमेत ऋषे रुद्रस्य मरुतो गृणानाः ॥८॥

द्युलोक र पृथिवी हाम्रो पोषणका लागि संलग्न रहून्। विविध किसिमको दान दिने उषादेवी हाम्रो हितका निम्ति प्रयास गरुन्। हे ऋषिहरू हो ! यी रुद्रपुत्र मरुत्हरू तिम्रा स्तुतिले प्रसन्न भएर जलको वर्षा गर्दछन्।

[सूक्त - ६०]

ऋषि - श्यावाश्व आत्रेय। देवता - मरुत्। छन्द - जगती त्रिष्टुप्।

ईडे अग्निं स्ववसं नमोभिरिह प्रसत्तो वि चयत्कृतं नः।
रथैरिव प्र भरे वाजयद्भिः प्रदक्षिणिन्मरुतां स्तोममृध्याम् ॥१॥

हामी श्यावाश्व ऋषि यस यज्ञमा राम्रो रक्षा गर्ने अग्निदेवलाई स्तोत्रले नमस्कारपूर्वक स्तुति गर्दछौँ। उनी हामीसित खुसी भएर स्तुति आदि कर्महरू जानून्। लक्ष्यसम्म पुग्ने रथजस्तो हामी पनि स्तोत्रले रुचाएको अन्न आदिबाट सम्पन्न होऔँ। प्रदक्षिणाका साथै हामी मरुत्हरूको स्तोत्रपाठ गरेर उन्नति गरौँ।

आ ये तस्थुः पृषतीषु श्रुतासु सुखेषु रुद्रा मरुतो रथेषु।
वना चिदुग्रा जिहते नि वो भिया पृथिवी चिद्रेजते पर्वतश्चित् ॥२॥

हे रुद्रपुत्र मरुत्हरू हो ! तिमीहरू छिर्के अश्वले युक्त, प्रसिद्ध र सुखदायक रथमा बस्दछौ। त्यस बेला तिमीहरूका डरले वन पनि काम्न थाल्दछ। मेघको कम्पनका साथै पृथ्वी पनि काम्दछ।

पर्वतश्चिन्महि वृद्धो बिभाय दिवश्चित्सानु रेजत स्वने वः।
यत्क्रीडथ मरुत ऋष्टिमन्त आपइव सध्र्यञ्चो धवध्वे ॥३॥

हे मरुत्हरू हो ! तिमीहरूले गरेका भीषण शब्दले अत्यन्त पुराना र विशाल पर्वतहरू पनि डरले काम्न थाल्दछन्। द्युलोकको शिखर पनि काम्दछ। हे मरुत्हरू हो ! विशिष्ट हतियार लिएर जब तिमीहरू क्रीडा गर्दछौ त्यस बेला मेघको हुलजस्तै भएर विशेष किसिमले दौड्दछौ।

वराइवेद्रैवतासो हिरण्यैरभि स्वधाभिस्तन्वः पिपिश्रे।
श्रिये श्रेयांसस्तवसो रथेषु सत्रा महांसि चक्रिरे तनूषु ॥४॥

धनी दुलाहाले गहना लगाएर शरीर सजाएझैँ मरुत्हरू स्वर्ण अलङ्कार र जलले आफ्नो शरीर शोभायुक्त सिंगार्दछन्। हितकारी र बलशाली मरुत्हरू रथमा एकत्र भई बसेर आआफ्ना शरीरमा तेज धारण गर्दछन्।

अज्येष्ठासो अकनिष्ठास एते सं भ्रातरो वावृधुः सौभगाय।
युवा पिता स्वपा रुद्र एषां सुदुघा पृश्निः सुदिना मरुद्भ्यः ॥५॥

मरुत्हरूमा कुनै जेठोकान्छो छैनन्, न त माहिलोसाँहिलो नै कुनै छ। यिनीहरू दाजुभाइको भावले संयुक्त छन्। सौभाग्य प्राप्तिका लागि यी निरन्तर प्रयत्नशील छन्। सधैँका तन्नेरी यी मरुत्हरूका पिता रुद्र हुन्। मरुतहरूकी माता पृथिवी दोहन योग्य छिन्। तिनी मरुत्हरूका लागि उत्तम दिनको निर्माण गर्दछिन्।

यदुत्तमे मरुतो मध्यमे वा यद्वावमे सुभगासो दिवि ष्ठ।
अतो नो रुद्रा उत वा न्वस्या अग्ने वित्ताद्धविषो यद्यजाम ॥६॥

हे सौभाग्यशाली मरुत्हरू हो ! तिमीहरू सबै द्युलोकको उपल्लो भाग, मध्यम भाग या तल्लो भागमा अवस्थित हुन्छौ। हे शत्रुसंहारक मरुत्हरू हो ! तिमीहरू यी तीनै भागमा हाम्रो रक्षा गर्नका लागि आओ। हे अग्निदेव ! हामीले बोलाएको सुन।

अग्निश्च यन्मरुतो विश्ववेदसो दिवो वहध्व उत्तरादधि ष्णुभिः।
ते मन्दसाना धुनयो रिशादसो वामं धत्त यजमानाय सुन्वते ॥७॥

हे सर्वज्ञ मरुत्हरू हो ! अग्निदेवसँग द्युलोकको उपल्लो ठाउँबाट अश्वमा विराजमान भएर यस सोमयागमा आओ। सोमपानले हर्षित भएर हाम्रा शत्रु हर्काओ। उनलाई समाप्त गर र सोमयाग गर्ने यजमानका लागि इच्छा लाग्दो धन प्रदान गर।

अग्ने मरुद्भिः शुभयद्भिर्ऋक्वभिः सोमं पिब मन्दसानो गणश्रिभिः।
पावकेभिर्विश्वमिन्वेभिरायुभिर्वैश्वानर प्रदिवा केतुना सजूः ॥८॥

हे सम्पूर्ण विश्वका नियन्ता अग्निदेव ! तिमी आफ्ना तेजस्वी ज्वालाले युक्त भएर अत्यन्त शोभनीय, तेजले युक्त, गणको आश्रय लिएर रहन्छौ। तिमी पवित्रकर्ता हौ, सबैलाई सन्तुष्ट गराउँछौ, आयु बढाउँछौ। मरुत्‌हरूसँगै सोमपान गरेर खुसी होऊ।

[सूक्त - ६१]

ऋषि - श्यावाश्व आत्रेय। देवता - मरुत्‌गण। छन्द - गायत्री अनुष्टुप् सतोबृहती।

के ष्ठा नरः श्रेष्ठतमा य एकएक आयय। परमस्याः परावतः ॥१॥

हे असल नेतृत्वकर्ता ! तिमीहरू को हौ र किन अत्यन्त टाढादेखि आकाश मार्गबाट यहाँ आउँछौ ?

क्व१ वोऽश्वाः क्वा३ भीशवः कथं शेक कथा यय। पृष्ठे सदो नसोर्यमः ॥२॥

हे मरुत्‌हरू हो ! तिमीहरूको अश्व कहाँ छ ? त्यसको लगाम कहाँ छ ? कसरी जान सक्छ र जान्छ ? त्यसको पिठ्युँको काठी र नाकमा लगाइएका डोरी कहाँ छन् ?

जघने चोद एषां वि सक्थानि नरो यमुः। पुत्रकृथे न जनयः ॥३॥

सघाउने मरुत्‌हरूले घोडाका तिघ्रामा चाबुकले हानेपछि सुत्केरी हुँदै गरेका आइमाईले झैं तिघ्रा फैलाउँदै यिनीहरू कुद्छन्।

परा वीरास एतन मर्यासो भद्रजानयः। अग्नितपो यथासथ ॥४॥

हे वीर मरुत्‌हरू हो ! तिमीहरू मानिसका हितैषि हौ र कल्याणकारी रूपमा जन्मएका हुनाले अग्निको तापजस्तै तेजोमय छौ। तिमीहरू जुन रूपमा छौ, उसै रूपमा आओ।

सनत्साश्व्यं पशुमुत गव्यं शतावयम्। श्यावाश्वस्तुताय या दोर्वीरायोपबर्बृहत्।

श्यावाश्वले स्तुति गरिएका ती वीरहरूलाई अभिवादन गर्नका लागि तरन्त राजाकी रानी शशीयसी देवीले आफ्ना हात उचालिन् र उनले श्यावश्वलाई अश्व, गाई र सय वटा भेडा प्रदान गरिन्।

उत त्वा स्त्री शशीयसी पुंसो भवति वस्यसी। अदेवत्रादराधसः ॥६॥

देवताको उपासना नगर्ने र धन दान नगर्नेका तुलनामा शशीयसी ज्यादै उत्कृष्ट छिन्।

वि या जानाति जसुरिं वि तृष्यन्तं वि कामिनम्। देवत्रा कृणुते मनः ॥७॥

शशीयसी देवी दुःखीलाई चिन्दछिन्, तिर्खाएकालाई चिन्दछिन्, धनको खोजीमा रहेकालाई जान्दछिन् र सधैंभरि देवताको पूजामा मन लगाउँछिन्।

उत घा नेमो अस्तुतः पुमाँ इति ब्रुवे पणिः। स वैरदेय इत्समः ॥८॥

शशीयसी देवीका अर्द्धाङ्ग पुरुषस्वरूप तरन्तको स्तुति गरेर पनि हामी स्तुति नै राम्रो भएन भन्दछौं। किनभने उनी दान गर्ने बेलामा सधैं समान व्यवहार गर्दछन्।

उत मेऽरपद्युवतिर्ममन्दुषी प्रति श्यावाय वर्तनिम्।
वि रोहिता पुरुमीळ्हाय येमतुर्विप्राय दीर्घयशसे ॥९॥

सधैं खुसी रहने युवती शशीयसीले श्यावाश्वलाई मार्गदर्शन गराइन्। शशीयसीका राता अश्वले बहुप्रशंसित, महान्, यशस्वी विप्रका मार्गतिर वहन गर्दछन्।

यो मे धेनूनां शतं वैददश्विर्यथा ददत्। तरन्तइव मंहना ॥१०॥

विददश्वका पुत्रले पनि हामीलाई तरन्तले जस्तै सय गाई र तेजस्वी धन प्रदान गरे।

य ईं वहन्त आशुभिः पिबन्तो मदिरं मधु। अत्र श्रवांसि दधिरे ॥११॥

मरुत्‌हरू द्रुतगामी अश्वमा चढेर अत्यन्त हर्षप्रद मधुर सोमपान गर्नका लागि आउँछन् र हामीलाई विपुल अन्न प्रदान गर्दछन्।

येषां श्रियाधि रोदसी विभ्राजन्ते रथेष्वा। दिवि रुक्मइवोपरि ॥१२॥

मरुत्‌हरूका शोभा द्यावापृथिवी व्याप्त बनेका छन्। तिनीहरू आकाशको माथिल्लो भागमा प्रकाशमान सूर्यदेवजस्तै रथमा विशिष्ट रूपले आभा विस्तार गर्दै छन्।

युवा स मारुतो गणस्त्वेषरथो अनेद्यः। शुभंयावाप्रतिष्कुतः ॥१३॥

मरुत्‌हरूको समुदाय सधैं तरुण र अनिन्दनीय छ। यी तेजस्वी रथमा विराजमान भएर वर्षा आदि शुभ कार्यका निम्ति निर्बाध गतिले गमन गर्दछन्।

को वेद नूनमेषां यत्रा मदन्ति धूतयः। ऋतजाता अरेपसः ॥१४॥

यज्ञ आदि कर्मबाट उत्पन्न भएका यी शत्रु थर्काउने मरुत्‌हरू पापरहित छन्। यी जहाँ खुसी हुन्छन्, त्यस्तो ठाउँ कसले जानेको छ ?

यूयं मर्तं विपन्यवः प्रणेतार इत्था धिया। श्रोतारो यामहूतिषु ॥१५॥

हे स्तुति योग्य मरुत्‌हरू हो ! तिमीहरू मानिसका लागि राम्रा नेता हौ। मानिसले बुद्धिपूर्वक गरेको आह्वान सुनेर तिमीहरू चाँडै आओ।

ते नो वसूनि काम्या पुरुश्चन्द्रा रिशादसः। आ यज्ञियासो ववृत्तन ॥१६॥

विभिन्न किसिमका उज्याला धनका स्वामी, शत्रुसंहारक, पूजनीय हे मरुत्‌हरू हो ! हामीलाई वाञ्छित धन आदि प्रदान गर।

एतं मे स्तोममूर्म्ये दार्भ्याय परा वह। गिरो देवि रथीरिव ॥१७॥

हे रात्रिदेवी ! हाम्रो स्तोत्ररूपी वाणीलाई मरुत्‌हरूका निम्ति उसै गरी वहन गर, जसरी कुनै रथी आफ्ना रथबाट गन्तव्यसम्म जान्छ।

उत मे वोचतादिति सुतसोमे रथवीतौ। न कामो अप वेति मे ॥१८॥

हे रात्रिदेवी ! रथवीतिले गरेको सोमयागमा हाम्रो कामना विफल भएन भन्ने मेरो वचन उनलाई भनिदेऊ।

एष क्षेति रथवीतिर्मघवा गोमतीरनु। पर्वतेष्वपश्रितः ॥१९॥

धनवान् रथवीतिको निवास गोमती नदीका किनारमा र पर्वतमा पनि छ।

[सूक्त - ६२]

**ऋषि** - श्रुतवित् आत्रेय। **देवता** - मित्रावरुण। **छन्द** - त्रिष्टुप्।

ऋतेन ऋतमपिहितं ध्रुवं वां सूर्यस्य यत्र विमुचन्त्यश्वान्।
दश शता सह तस्थुस्तदेकं देवानां श्रेष्ठं वपुषामपश्यम् ॥१॥

हे मित्रावरुण ! तिमीहरू सबैको अटल आश्रय स्थान छ र त्यहाँ सूर्यदेवले अश्व फुकाउँछन्। सूर्यदेव सत्य र यज्ञरूपी ऋतमा आबद्ध छन्। तिनीसँग हजारौं सङ्ख्यामा अश्व छन्। त्यस्ता सुन्दर रूप भएका देवताका सौन्दर्यको हामीले दर्शन गर्‍यौं।

तत्सु वां मित्रावरुणा महित्वमीर्मा तस्थुषीरहभिर्दुदुह्रे।
विश्वाः पिन्वथः स्वसरस्य धेना अनु वामेकः पविरा ववर्त ॥२॥

हे मित्र र वरुण ! तिमीहरू दुवैको महत्त्व अत्यन्त प्रसिद्ध छ। निरन्तर भ्रमणशील सूर्यदेवसँगै तिमीहरूमध्ये एकले दिनको उज्यालोमा स्थावरको रस दोहन गर्दछौ। घुमिरहने सूर्यदेवको प्रकाश तिमीहरू स्वयं बढाउँछौ। तिमीहरूमध्ये एकको चक्र सधैं गतिशील रहन्छ।

अधारयतं पृथिवीमुत द्यां मित्रराजाना वरुणा महोभिः।
वर्धयतमोषधीः पिन्वतं गा अव वृष्टिं सृजतं जीरदानू ॥३॥

हे दीप्तिमान मित्रावरुण ! तिमीहरू आफ्ना तेजले द्यावापृथिवी धारण गर्दछौ। हे शीघ्र दानकर्ता देवताहरू हो ! तिमीहरू औषधि र गाई बढाउँछौ। तिमीहरूले हाम्रा लागि वर्षा प्रवाहित गराइदिएका छौ।

आ वामश्वासः सुयुजो वहन्तु यतरश्मय उप यन्त्वर्वाक्।
घृतस्य निर्णिगनु वर्तते वामुप सिन्धवः प्रदिवि क्षरन्ति ॥४॥

हे दीप्तिसम्पन्न मित्र र वरुण ! गतिलो गरी सधाइएका अश्वले तिमीहरू दुवैलाई वहन गरुन्। सारथीले लगामद्वारा तिनलाई नियन्त्रण गरुन्। यज्ञमा घिउका धारा प्रवाहित भएझैं तिमीहरूले द्युलोकबाट नदीका धारा बगाएका छौ।

अनु श्रुताममतिं वर्धदुर्वी बर्हिरिव यजुषा रक्षमाणा।
नमस्वन्ता धृतदक्षाधि गर्ते मित्रासाथे वरुणेडास्वन्तः ॥५॥

हे बलसम्पन्न मित्र र वरुणदेव ! तिमीहरू दुवै शरीरको कान्ति अझै बढाओ। यजुर्वेदका मन्त्रले यज्ञको रक्षा गरेझैं तिमीहरू पृथ्वीको रक्षा गर। हे अन्नवान् ! तिमीहरू दुवै रथमा विराजित भएर हाम्रा यज्ञका माझमा आएर बस।

अक्रविहस्ता सुकृते परस्या यं त्रासाथे वरुणोडास्वन्तः।
राजाना क्षत्रमहृणीयमाना सहस्रस्थूणं बिभृथः सह द्वौ ॥६॥

हे मित्र र वरुणदेव ! तिमीहरू दुवै सिपालु, अदृश्य रक्षक र हिंसाविरोधी हौ। हे तेजस्वीहरू हो ! तिमीहरू दुवै उत्तम कर्म गर्ने यजमानका यज्ञमा उसको रक्षा गर्दछौ र त्यस यजमानलाई धनले भरिएको हजारौं खम्बामा ठडिएको घर पनि प्रदान गर्दछौ।

हिरण्यनिर्णिगयो अस्य स्थूणा वि भ्राजते दिव्य१श्वाजनीव।
भद्रे क्षेत्रे निमिता तिल्विले वा सनेम मध्वो अधिगर्त्यस्य ॥७॥

मित्र र वरुणदेवको रथ स्वर्णमय छ। रथका स्तम्भ पनि स्वर्णमय छन्। यस रथले आकाशमा बिजुलीको जस्तै विशिष्ट आभा छर्दछ। यस रथका कल्याणकारी स्थानमा रसले भरिएको भाँडो राखिएको छ। हामी यस रथमा राखेको मधुर रस प्राप्त गरौं।

हिरण्यरूपमुषसो व्युष्टावयः स्थूणमुदिता सूर्यस्य।
आ रोहथो वरुण मित्र गर्तमतश्चक्षाथे अदितिं दितिं च ॥८॥

हे मित्र र वरुणदेवहरू हो ! उषा प्रकट भएर सूर्यदेव उदाएपछि तिमीहरू सुनौला स्तम्भ भएका रथमा आरोहण गरेर त्यसै रथबाट पृथ्वी र यहाँका प्राणीहरू हेर्दछौ।

यद्बंहिष्ठं नातिविधे सुदानू अच्छिद्रं शर्म भुवनस्य गोपा।
तेन नो मित्रावरुणावविष्टं सिषासन्तो जिगीवांसः स्याम ॥९॥

हे उत्तम दानशील, लोकरक्षक मित्र र वरुणदेव ! अत्यन्त विशाल, आघातमुक्त र अखण्डित घरमा हामीलाई रक्षा गर। हामी चाहिएको धन प्राप्त गरेर शत्रुविजेता हौं।

[सूक्त - ६३]

ऋषि - अर्चनाना आत्रेय। देवता - मित्रावरुण। छन्द - जगती।

ऋतस्य गोपावधि तिष्ठथो रथं सत्यधर्माणा परमे व्योमनि।
यमत्र मित्रावरुणावथो युवं तस्मै वृष्टिर्मधुमत्पिन्वते दिवः ॥१॥

हे जलका रक्षक, सत्य धर्मका पालक मित्र र वरुणदेव ! तिमीहरू दुवै हाम्रा यज्ञमा आउनका लागि परम आकाशमा रथमा चढ्दछौ। तिमीहरू दुवैले यज्ञमा यजमानको रक्षा गर्दछौ र उसलाई आकाशबाट मधुर जलको वर्षा गरेर स्वस्थ गराउँछौ।

सम्राजावस्य भुवनस्य राजथो मित्रावरुणा विदथे स्वर्दृशा।
वृष्टिं वां राधो अमृतत्वमीमहे द्यावापृथिवी वि चरन्ति तन्यवः ॥२॥

हे स्वर्गका द्रष्टा मित्र र वरुणदेव ! तिमीहरू दुवै यस लोकका सम्राट् हौ र यज्ञमा दीप्तिमान् हुन्छौ। तिमीहरू दुवैसित हामी अनुकूल वर्षा, ऐश्वर्य र अमरता माग्दछौं। तिमीहरूका प्रकाशमान किरणहरू आकाश र पृथ्वीमा विचरण गर्दछन्।

सम्राजा उग्रा वृषभा दिवस्पती पृथिव्या मित्रावरुणा विचर्षणी।
चित्रेभिरभ्रैरुप तिष्ठथो रवं द्यां वर्षयथो असुरस्य मायया ॥३॥

हे मित्र र वरुणदेव हो ! तिमीहरू दुवै अत्यन्त प्रकाशमान, उग्र बलसम्पन्न र वर्षा गराउने हौ। तिमीहरू द्युलोक र पृथिवीलोकका अधिपति र विशिष्ट रूपका द्रष्टा हौ। विलक्षण मेघका साथ तिमीहरू गर्जनशील भएर अधिष्ठित छौ। आफ्ना भयङ्कर बलले कुशलतापूर्वक तिमीहरू द्युलोकबाट वर्षा गराउँछौ।

माया वां मित्रावरुणा दिवि श्रिता सूर्यो ज्योतिश्चरति चित्रमायुधम्।
तमभ्रेण वृष्ट्या गूहथो दिवि पर्जन्य द्रप्सा मधुमन्त ईरते ॥४॥

हे मित्र र वरुणदेव हो ! तिमीहरू दुवैको प्रभाव द्युलोकमा आश्रित छ र त्यसैबाट सूर्यदेवको विलक्षण आयुधरूप प्रकाश सर्वत्र पुग्दछ। तिमीहरू दुवै सूर्यदेवलाई वर्षणशील मेघले छोपिदिन्छौ। हे पर्जन्य ! तिमी देवताहरूबाट प्रेरित छौ र तिम्रै कारण मधुर जलराशि तल झर्दछ।

रथं युञ्जते मरुतः शुभे सुखं शूरो न मित्रावरुणा गविष्टिषु।
रजांसि चित्रा वि चरन्ति तन्यवो दिवः सम्राजा पयसा न उक्षतम् ॥५॥

हे मित्र र वरुणदेव हो ! युद्धमा जान रुचाउने वीरले झैं आआफ्नो रथ सजाओ। उसै किसिमले मरुत्हरू तिमीहरूसित प्रेरित हुन्छन् र वर्षा गर्नका लागि सुखकर रथ तयार पार्दछन्। आकाशमा

निवास गर्ने मरुत्‌हरू विविध लोकमा वर्षा गर्नका लागि घुम्छन्। हे अत्यन्त प्रकाशक देवता हो ! मरुत्‌हरूका सहायताले तिमीहरू उत्तम जलको वर्षा गरेर हामीलाई सेचन गर।

**वाचं सु मित्रावरुणाविरावतीं पर्जन्यश्चित्रां वदति त्विषीमतीम्।**
**अभ्रा वसत मरुतः सु मायया द्यां वर्षयतमरुणामरेपसम् ॥६॥**

हे मित्र र वरुणदेव हो ! तिमीहरूकै कारण मेघ अन्न उत्पादन गर्छ र तेजोमयी विचित्र खालको गर्जनयुक्त बोली बोल्दछ। मरुत्‌हरू आफ्ना सामर्थ्यले मेघलाई राम्ररी फिँजाउँछन्। तिमीहरू दैवी अरुणिम र निर्मल आकाशबाट वर्षा गराउँछौ।

**धर्मणा मित्रावरुणा विपश्चिता व्रता रक्षेथे असुरस्य मायया।**
**ऋतेन विश्वं भुवनं वि राजथः सूर्यमा धत्थो दिवि चित्र्यं रथम् ॥७॥**

हे मेधावान् मित्र र वरुण ! तिमीहरू दुवै संसारको हित गर्ने वर्षाले यज्ञको नियम रक्षा गर्दछौ। जल वर्षा गराउने मेघका सामर्थ्यले तिमीहरू यज्ञबाट सम्पूर्ण लोकलाई नै विशेष प्रकाशित गराउँछौ। तिमीहरू पूजनीय र वेगवान् सूर्यदेवलाई द्युलोकमा स्थापित गर्दछौ।

## [सूक्त - ६४]

**ऋषि** - अर्चनाना आत्रेय। **देवता** - मित्रावरुण। **छन्द** - अनुष्टुप् पङ्क्ति।

**वरुणं वो रिशादसमृचा मित्रं हवामहे। परि व्रजेव बाह्वोर्जगन्वांसा स्वर्णरम् ॥**

चरनमा गाई हिँडेझैं सर्वत्र गमनशील मित्र र वरुणलाई हामी ऋचाले आह्वान गर्दछौं। यी मित्र र वरुणदेव आफ्ना सामर्थ्यले सर्वत्र पुग्छन्। स्वर्णधन प्रदान गर्ने यिनीहरू शत्रुको विनाश गर्दछन्।

**ता बाहवा सुचेतुना प्र यन्तमस्मा अर्चते।**
**शेवं हि जार्यं वां विश्वासु क्षासु जोगुवे ॥२॥**

हे मित्र र वरुणदेव हो ! हामीहरू उत्साहपूर्ण मनले पूजन गर्दछौं। हामीजस्ता पूजकलाई तिमीहरू दुवै हात खोलेर प्रशस्त मात्रामा सुख प्रदान गर। तिमीहरूको प्रशंसाका गीत हामी सबैसित गर्नेछौं।

**यन्नूनमश्यां गतिं मित्रस्य यायां पथा। अस्य प्रियस्य शर्मण्यहिंसानस्य सश्चिरे।**

हामी मित्रदेवका मार्गमा अनुगमन गर्दै निश्चित गति प्राप्त गरौं। हाम्रा प्रिय र अहिंसक मित्रदेवको सुख हामीलाई प्राप्त होस्।

**युवाभ्यां मित्रावरुणोपमं धेयामृचा। यद्ध क्षये मघोनां स्तोतृणां च स्पूर्धसे ।४।**

हे मित्र र वरुणदेव हो ! हामी तिम्रो त्यो धन प्राप्त गरौं जुन धनी स्तोताका घरमा आपसी द्वन्द्वको बिउ बनेको हुन्छ।

**आ नो मित्र सुदीतिभिर्वरुणश्च सधस्थ आ।**
**स्वे क्षये मघोनां सखीनां च वृधसे ॥५॥**

हे मित्र र वरुणदेव हो ! तिमीहरू दुवै उत्तम तेजले युक्त भएर हाम्रा घरमा आओ। तिमीहरू निश्चित नै आओ र धनी मित्रलाई समृद्धिसम्पन्न बनाओ।

**युवं नो येषु वरुण क्षत्रं बृहच्च बिभृथः।**
**उरु णो वाजसातये कृतं राये स्वस्तये ॥६॥**

हे मित्र र वरुणदेव हो ! तिमीहरू यज्ञमा जुन अत्यन्त व्यापक बल धारण गर्दछौ, त्यस बलले हाम्रो अन्न, धन र कल्याणमा वृद्धि गर।

**उच्छन्त्यां मे यजता देवक्षत्रे रुशद्गवि।**
**सुतं सोमं न हस्तिभिरा पड्भिर्धावतं नरा बिभ्रतावर्चनानसम् ॥७॥**

हे मित्र र वरुणदेव हो ! तिमीहरू नेतृत्वकर्ता र पूजनीय छौ। उषाकालमा स्वर्णिम रश्मि प्रकाशित हुँदाखेरि दुवै हातमा धन धारण गराउँछौ। यज्ञमा हामीबाट पेलेर तयार पारिएको सोम ग्रहण गर्नका लागि तिमीहरू गाडारूपी हात र चक्ररूपी गोडा भएका रथले कुदेर आओ।

[सूक्त - ६५]

**ऋषि** - रातहव्य आत्रेय। **देवता** - मित्रावरुण। **छन्द** - अनुष्टुप् पङ्क्ति।

**यश्चिकेत स सुक्रतुर्देवत्रा स ब्रवीतु नः।**
**वरुणो यस्य दर्शतो मित्रो वा वनते गिरः ॥१॥**

स्तोताले देवताहरूमध्ये मित्र र वरुणदेवको स्तुति गर्न जान्दछन् र उत्तम कर्म गर्दै स्तुति गर्दछन्, देवताहरू उनको स्तुति ग्रहण गर्दछन्। त्यस्ता स्तोताले हामीलाई सिकाऊन्।

**ता हि श्रेष्ठवर्चसा राजाना दीर्घश्रुत्तमा।**
**ता सत्पती ऋतावृध ऋतावाना जनेजने ॥२॥**

मित्र र वरुणदेव मनग्गे तेजसम्पन्न अधिष्ठाताका रूप हुन् र टाढाको प्रदेशबाट पनि आह्वान सुन्दछन्। सत्यशील यजमानका अधिपति, यज्ञलाई बढाउने यिनीहरू प्रत्येक मानिसमा सत्यको स्थापना गराउँछन्।

**ता वामियानोऽवसे पूर्वा उप ब्रुवे सचा।**
**स्वश्वासः सु चेतुना वाजाँ अभि प्र दावने ॥३॥**

पुरातन, उत्तम ज्ञानसम्पन्न हे मित्रावरुणदेव हो ! तिमीहरूका सम्मुख उपस्थित भएर हामी आफ्नो रक्षाका लागि स्तुति गर्दछौं। उत्तम अश्वका स्वामी तिमीहरूलाई हामी अन्न दानका लागि उत्कृष्ट स्तुति गर्दछौं।

**मित्रो अंहोश्चिदादुरु क्षयाय गातुं वनते।**
**मित्रस्य हि प्रतूर्वतः सुमतिरस्ति विधतः ॥४॥**

मित्रदेव पापी स्तोतालाई पनि संरक्षणको महान् आश्रय प्राप्त गर्ने उपाय बताउँछन्। हिंसक भक्तका लागि पनि मित्रदेवको भाव उत्तम रहन्छ।

**वयं मित्रस्यावसि स्याम सप्रथस्तमे। अनेहसस्त्वोतयः सत्रा वरुणशेषसः ॥५॥**

हामी मित्रदेवका अत्यन्त व्यापक संरक्षणमा स्थित होऔं। वरुणदेवका सन्तानजस्ता हामीहरू तिमीबाट रक्षित र निष्पाप भएर संयुक्त रूपले रहौं।

**युवं मित्रेमं जनं यतथः सं च नयथः।**
**मा मघोनः परि ख्यतं मो अस्माकमृषीणां गोपीथे न उरुष्यतम् ॥६॥**

हे मित्रावरुणदेव हो ! जुन मानिसले स्तवन गर्दछन्, उनीहरूलाई तिमीहरू दुवैले उत्तम मार्गमा लान्छौ। हे ऐश्वर्यशाली देवताहरू हो ! हामी यजमानलाई नछोड, ऋषिका सन्तानलाई नत्याग। सोमदेवले यज्ञ आदि कार्यमा हामीलाई रक्षा गरुन्।

[सूक्त - ६६]

**ऋषि** - रातहव्य आत्रेय। **देवता** - मित्रावरुण। **छन्द** - अनुष्टुप्।

**आ चिकितान सुक्रतू देवौ मर्त रिशादसा।**
**वरुणाय ऋतपेशसे दधीत प्रयसे महे ॥१॥**

हे ज्ञानसम्पन्न मानिसहरू हो ! शत्रुका लागि हिंसक र उत्तम कर्म गर्ने मित्रावरुणलाई आह्वान गर। पानीको रूपमा अन्न उत्पादन गर्ने, महान् वरुणदेवलाई जल प्रदान गर।

**ता हि क्षत्रमविह्रुतं सम्यगसुर्य१ माशाते।**
**अध व्रतेव मानुषं स्व१र्ण धायि दर्शतम् ॥२॥**

तिमीहरू दुवैको बल सज्जनका लागि रक्षक र असुरका लागि विनाशक छ। तिमीहरू दुवै सम्पूर्ण बलका अधिष्ठाता हौ। मानिसमा कर्मको सामर्थ्य र सूर्यदेवमा प्रकाश स्थापित भएपछि सुहाउँदो भएझैं तिमीहरूमा स्थापित भएको बल सुन्दर हुन्छ।

**ता वामेषे रथानामुर्वीं गव्यूतिमेषाम्।**
**रातहव्यस्य सुष्टुतिं दधृक्स्तोमैर्मनामहे ॥३॥**

हे मित्र र वरुणदेव हो ! रातहव्यले उत्तम स्तुति गर्दै बोलाउँदा तिमीहरू दुवै अत्यन्त विस्तृत मार्गबाट आउने गर्दछौ।

अधा हि काव्या युवं दक्षस्य पूर्भिरद्भुता।
निं केतुना जनानां चिकेथे पूतदक्षसा ॥४॥

हे अद्भुत कार्य गर्ने र बलसम्पन्न मित्रावरुणदेव हो ! कुशल साधक तिमीहरू दुवैलाई स्तुति र प्रशंसा गर्दछन्। तिमीहरू अनुकूल मनले यजमानका स्तोत्र सुन।

तदृतं पृथिवि बृहच्छ्रव एष ऋषीणाम्। ज्रयसानावरं पृथ्वति क्षरन्ति यामभिः ॥

हे पृथिवीदेवी ! ऋषिहरूको अन्नको रहर पूरा गराउनका लागि विपुल जलराशिले पूर्ण होऊ। मित्र र वरुणदेव आफ्ना गमनशील साधनले विपुल जलवर्षा गराउँछन्।

आ यद्वामीयचक्षसा मित्र वयं च सूरयः। व्यचिष्ठे बहुपाय्ये यतेमहि स्वराज्ये॥

हे दूरद्रष्टा मित्र र वरुणदेव हो ! हामी स्तोताहरू तिमीहरू दुईलाई आह्वान गर्दछौं। त्यसबाट हामी तिमीहरूका अत्यन्त विशाल तथा संरक्षित राज्यमा आवागमन गरौं।

[सूक्त - ६७]

ऋषि - यजत आत्रेय। देवता - मित्रावरुण। छन्द - अनुष्टुप्।

बळित्था देव निष्कृतमादित्या यजतं बृहत्।
वरुण मित्रार्यमन्वर्षिष्ठं क्षत्रमाशाथे ॥१॥

हे दीप्तिमान् आदित्यपुत्र मित्र, वरुण र अर्यमादेव हो ! तिमीहरू निश्चय नै अपराजेय, पूजनीय र अत्यन्त महान् बलशाली छौ।

आ यद्योनिं हिरण्ययं वरुण मित्र सदथः।
धर्तारा चर्षणीनां यन्तं सुम्नं रिशादसा ॥२॥

हे मित्र र वरुणदेव हो ! तिमीहरू रमणीय यज्ञभूमिमा आएर प्रतिष्ठित भएपछि हामीलाई सुख प्रदान गर।

विश्वे हि विश्ववेदसो वरुणो मित्रो अर्यमा।
व्रता पदेव सश्चिरे पान्ति मर्त्यं रिषः ॥३॥

सर्वज्ञाता वरुण, मित्र र अर्यमा यी सबै देवता हाम्रा यज्ञमा आआफ्नो स्थानअनुरूप सुशोभित हुन्छन् र हिंसकहरूबाट मानिसको रक्षा गर्दछन्।

ते हि सत्या ऋतस्पृश ऋतावानो जनेजने।
सुनीथासः सुदानवोऽहोश्चिदुरुचक्रयः ॥४॥

देवताहरू सत्य स्वरूपवान्, यज्ञरूपी व्रतको आचरण गर्ने र यज्ञका रक्षक हुन्। यिनीहरू प्रत्येक यजमानलाई असल मार्गमा प्रेरित गर्दछन् र उत्तम दानशील छन्। यी वरुण आदि देवताहरू पापी स्तोतालाई पनि ऐश्वर्य प्रदान गर्दछन्।

को नु वां मित्रास्तुतो वरुणो वा तनूनाम्।
तत्सु वामेषते मतिरत्रिभ्य एषते मतिः ॥५॥

हे मित्र र वरुणदेव हो ! तिमीहरू दुईमध्ये मानिसबाट स्तुति नपाउने को होला र ? हाम्रो बुद्धि तिमीहरूको स्तुति गर्नमा लागेको छ। अत्रिका वंशजको बुद्धि पनि तिमीहरूको स्तुतिमा लागेको हुन्छ।

[सूक्त - ६८]

ऋषि - यजत आत्रेय। देवता - मित्रावरुण। छन्द - गायत्री।

प्र वो मित्राय गायत वरुणाय विपा गिरा। महिक्षत्रावृतं बृहत् ॥१॥

हे ऋत्विक्हरू हो ! तिमीहरू मित्र र वरुणदेवका लागि तेज ध्वनिले गायन गर। महानता युक्त, क्षात्र बलले सम्पन्न दुवै देवताहरू यज्ञस्थलमा विस्तृत स्तोत्रगान सुन्नका लागि उपस्थित होऊन्।

सम्राजा या घृतयोनी मित्रश्चोभा वरुणश्च। देवा देवेषु प्रशस्ता ॥२॥

तेजस्विताका उत्पत्तिकेन्द्र, मित्र र वरुण यी दुवै अधिपतिहरूको देवताहरूका माझमा प्रशंसा हुन्छ।

ता नः शक्तं पार्थिवस्य महो रायो दिव्यस्य। महि वां क्षत्रं देवेषु ॥३॥

देवताहरूमा प्रसिद्ध, पराक्रमी हे मित्र र वरुणदेव हो ! हामीलाई पृथ्वी र द्युलोकको अपार वैभव प्रदान गर, हामी तिमीहरूको स्तुति गर्दछौं।

**ऋतमृतेन सपन्तेषिरं दक्षमाशाते। अद्रुहा देवौ वर्धेते ॥४॥**

सत्यतापूर्वक सत्यको पालन गर्नेले खोजेको कुरो पाउँछ। द्रोह नगर्ने मित्र र वरुणदेव आफ्ना सामर्थ्यले उन्नति गर्दछन्।

**वृष्टिद्यावा रीत्यापेषस्पती दानुमत्याः। बृहन्तं गर्तमाशाते ॥५॥**

वर्षाका लागि जसको वन्दना गरिन्छ, नियमअनुसार सबै कुरो प्राप्त गर्ने, दानको प्रवृत्ति भएका, अन्नका अधिपति ती मित्र र वरुणदेव उच्च स्थानमा प्रतिष्ठित हुन्छन्।

[सूक्त - ६९]

**ऋषि** – उरुचक्रि आत्रेय। **देवता** – मित्रावरुण। **छन्द** – त्रिष्टुप्।

**त्री रोचना वरुण त्रीँरुत द्यून्त्रीणि मित्र धारयथो रजांसि।**
**वावृधानावमतिं क्षत्रियस्यानु व्रतं रक्षमाणावजुर्यम् ॥१॥**

हे मित्र र वरुणदेव हो ! तिमीहरू विशेष्ट तेज, तीन द्युलोक र तीन अन्तरिक्षलोकलाई धारण गर्दछौ। तिमीहरू दुवै क्षत्रिय सामर्थ्य बढाउँछौ र अक्षय कर्मको रक्षा गर्दछौ।

**इरावतीर्वरुण धेनवो वां मधुमद्वां सिन्धवो मित्र दुह्रे।**
**त्रयस्तस्थुर्वृषभासस्तिसृणां धिषणानां रेतोधा वि द्युमन्तः ॥२॥**

हे मित्र र वरुणदेव हो ! तिमीहरू दुवैका कृपाले गाईले दुध दिन्छन् र नदीले मिठो जल प्राप्त गर्दछन्। तिमीहरू दुवै सँगसँगै जल वर्साउने, पानी धारण गर्ने र दीप्तिमान् तीन देव, तीन लोकका अधिपतिका रूपमा रहेका छौ।

**प्रातर्देवीमदितिं जोहवीमि मध्यन्दिन उदिता सूर्यस्य।**
**राये मित्रावरुणा सर्वतातेडे तोकाय तनयाय शं योः ॥३॥**

हामी बिहानीको सवनमा देवी अदितिलाई आह्वान गर्दछौँ र दिनको मध्य भागका सवनमा सूर्यदेवको स्तुति गर्दछौँ। हे मित्रावरुणदेव हो ! हामी धन प्राप्तिका लागि र पुत्रपौत्रादिको कल्याणका लागि यज्ञमा तिमीहरूको स्तुति गर्दछौँ।

**या धर्तारा रजसो रोचनस्योतादित्या दिव्या पार्थिवस्य।**
**न वां देवा अमृता आ मिनन्ति व्रतानि मित्रावरुणा ध्रुवाणि ॥४॥**

हे आदित्यका पुत्र मित्र र वरुणदेव हो ! तिमीहरू द्युलोक र तेजस्वी पृथ्वीलोक धारण गर्दछौ। तिमीहरूको अटल नियम इन्द्र आदि अमर देवताले पनि उल्लङ्घन गर्दैनन्।

[सूक्त - ७०]

**ऋषि** – उरुचक्रि आत्रेय। **देवता** – मित्रावरुण। **छन्द** – गायत्री।

**पुरूरुणा चिद्ध्यस्त्यवो नूनं वां वरुण। मित्र वंसि वां सुमतिम् ॥१॥**

हे मित्र र वरुणदेवताहरू हो ! तिमीहरू दुवैसित काम लाग्ने साधन मनग्गे उपलब्ध छन्। तिमीहरूको गतिलो बुद्धिको अनुकूलता हामीलाई सधैं प्राप्त हुने गरोस्।

**ता वां सम्यगद्रुह्वाणेषमश्याम धायसे। वयं ते रुद्रा स्याम ॥२॥**

तिमीहरू दुवै द्वेषरहित छौ र हामी राम्रोसित वन्दना गर्दछौँ। हामीलाई तिमीहरूका मित्रताले धन र घरको लाभ होस्।

**पातं नो रुद्रा पायुभिरुत त्रायेथां सुत्रात्रा। तुर्याम दस्यून्तनूभिः ॥३॥**

हे मित्र र वरुणदेवहरू हो ! असल संरक्षकका रूपमा आफ्ना साधनले हाम्रो संरक्षण र पालन गर। त्यस सामर्थ्यका भरमा हामी शत्रुमाथि विजयी हुन सकौँ।

**मा कस्याद्भुतक्रतू यक्षं भुजेमा तनूभिः। मा शेषसा मा तनसा ॥४॥**

हे अद्‌भुत कर्म सम्पन्न गर्ने मित्र र वरुणदेवहरू हो ! हामी आफैंले अरूको धन उपभोग नगरौं। हाम्रा आफन्तहरूले पनि कसैको धन उपभोग नगरून्।

[सूक्त - ७१]

**ऋषि** – बाहुवृक्त आत्रेय। **देवता** – मित्रावरुण। **छन्द** – गायत्री।

**आ नो गन्तं रिशादसा वरुण मित्र बर्हणा। उपेमं चारुमध्वरम् ॥१॥**

हे मित्र र वरुणदेवहरू हो ! तिमीहरू दुवै शत्रुहिंसक र शत्रुनाशक हौ। तिमीहरू दुवै हाम्रा अत्यन्त स्वच्छ यज्ञमा आउने कृपा गर।

**विश्वस्य हि प्रचेतसा वरुण मित्र राजथः। ईशाना पिप्यतं धियः ॥२॥**

हे उत्कृष्ट ज्ञानसम्पन्न मित्र र वरुणदेव हो ! तिमीहरू सम्पूर्ण विश्वका प्रकाशक हौ र सबैमाथि प्रभुत्व राख्दछौ। हामीलाई रुचाएको बुद्धिले तिमीहरू सन्तुष्ट गर।

**उप नः सुतमा गतं वरुण मित्र दाशुषः। अस्य सोमस्य पीतये ॥३॥**

हे मित्र र वरुणदेव हो ! हामी पेलेर तयार पारेको सोम मिसाइएको हव्य प्रदान गर्दछौँ। तिमीहरू हामीले पेलेर तयार पारेको सोम पान गर्नका लागि हामीकहाँ आओ।

## [सूक्त – ७२]

**ऋषि** – बाहुवृक्त आत्रेय। **देवता** – मित्रावरुण। **छन्द** – उष्णिक्।

**आ मित्रे वरुणे वयं गीर्भिर्जुहुमो अत्रिवत्। नि बर्हिषि सदतं सोमपीतये ॥१॥**

अत्रिका वंशजहरूले जस्तै हामी पनि मित्र र वरुणका लागि स्तुति गर्दै आह्वान गर्दछौँ। हे देवताहरू हो ! सोमपानका लागि कुशका आसनमा बस।

**व्रतेन स्थो ध्रुवक्षेमा धर्मणा यातयज्जना। नि बर्हिषि सदतं सोमपीतये ॥२॥**

हे शत्रुविनाशक मित्र र वरुणदेव हो ! तिमीहरू आफ्ना धर्मयुक्त नियमका कारण अटल आश्रयमा अडिएका छौ। सोमपानका लागि कुशका आसनमा बस।

**मित्रश्च नो वरुणश्च जुषेतां यज्ञमिष्टये। नि बर्हिषि सदतां सोमपीतये ॥३॥**

हे मित्रावरुणहरू हो ! हाम्रा यज्ञलाई स्वेच्छापूर्वक ग्रहण गर। सोमपानका लागि कुशका आसनमा बस।

## [सूक्त – ७३]

**ऋषि** – पौर आत्रेय। **देवता** – अश्विनीकुमार। **छन्द** – अनुष्टुप्।

**यदद्य स्थः परावति यदर्वावत्यश्विना।**
**यद्वा पुरू पुरुभुजा यदन्तरिक्ष आ गतम् ॥१॥**

हे अनेक स्थानमा भोज्य पदार्थ प्राप्त गर्ने अश्विनीकुमारहरू हो ! तिमीहरू टाढा वा नजिक धेरै ठाउँमा वा अन्तरिक्षमा जहाँसुकै भए पनि त्यहाँबाट हामीकहाँ आओ।

**इह त्या पुरुभूतमा पुरू दंसांसि बिभ्रता।**
**वरस्या याम्यध्रिगू हुवे तुविष्टमा भुजे ॥२॥**

अश्विनीकुमारहरूको सम्बन्ध अनेकौं यजमानहरूसित छ। विविध रूप धारण गर्ने र वरणीय छन्। अबाधित गतिका र सर्वोत्कृष्ट बल सम्पन्न छन्। यिनीहरूलाई उत्तम आहुतिका निम्ति हामी बोलाउँछौँ।

**ईर्मान्यद्वपुषे वपुश्चक्रं रथस्य येमथुः।**
**पर्यन्या नाहुषा युगा मह्ना रजांसि दीयथः ॥३॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैले रथका एक पाङ्ग्रालाई सूर्यको शोभा बढाउनका लागि नियमित गरायौ र अर्को पाङ्ग्राले मानिसहरूका लागि युग आदि कालको प्रकट गर्न सबैतिर घुमाउँछौ।

**तदू षु वामेना कृतं विश्वा यद्वामनु ष्टवे।**
**नाना जातावरेपसा समस्मे बन्धुमेयथुः ॥४॥**

हे सर्वत्र व्याप्त अश्विनीकुमारहरू हो ! हामी जुन स्तोत्रले तिमीहरू दुवैलाई उपयुक्त स्तुति गर्दछौँ, त्यो राम्ररी सम्पादित होस्। हे निष्पाप र विभिन्न कर्मका लागि प्रसिद्ध देवताहरू हो ! हामीसित तिमीहरू दाजुभाइजस्ता भइदेओ।

**आ यद्वां सूर्या रथं तिष्ठद्रघुष्यदं सदा। परि वामरुषा वयो घृणा वरन्त आतपः।**

हे अश्विनीकुमारहरू हो ! जब तिमीहरू दुईका रथमा सूर्यपुत्री उषा आउँछिन्, त्यस बेला अत्यन्त दीप्त अरुणिम रश्मिले तिमीहरूलाई छेकेको हुन्छ।

**युवोरत्रिश्चिकेतति नरा सुम्नेन चेतसा। घर्मं यद्वामरेपसं नासत्यास्ना भुरण्यति।**

हे नेताजस्ता अश्विनीकुमारहरू हो ! अत्रि ऋषिले जब तिमीहरू दुवैको स्तुति गर्दै अग्निको सुखप्रद रूप चिने, त्यस बेला उनले कृतज्ञ मनले तिमीहरूलाई स्मरण गरे।

उग्रो वां ककुहो ययिः शृण्वे यामेषु सन्तनिः ।
यद्वां दंसोभिरश्विनात्रिर्नराववर्तति ॥७॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू गमन गर्दा बलिया, उच्च, निरन्तर गमनशील रथको शब्द सुनिन्छ। अनि अत्रि ऋषि आफ्ना कार्यले तिमीहरू दुवैलाई आकृष्ट गर्दछन्।

मध्व ऊ षु मधूयुवा रुद्रा सिषक्ति पिप्युषी ।
यत्समुद्राति पर्षथः पक्वाः पृक्षो भरन्त वाम् ॥८॥

हे मह मिसाउने रुद्रका पुत्र अश्विनीकुमारहरू हो ! हाम्रो सुमधुर स्तुतिले तिमीहरूमा मधुरताको सेचन गर्दछ। तिमीहरू दुवै अन्तरिक्षको सीमा नाघ्दछौ र पाकिसकेको हविष्यान्नले सन्तुष्ट हुन्छौ।

सत्यमिद्वा उ अश्विना युवामाहुर्मयोभुवा ।
ता यामन्यामहूतमा यामन्ना मृळयत्तमा ॥९॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुई अत्यन्त सुखदायक छौ भनी विद्वान्हरू बयान गर्दछन् र त्यो भनाइ अत्यन्त सत्य हो। यज्ञमा हामी बोलाउँछौं, तिमीहरू यहाँ आएर हाम्रा निम्ति सुखदायक होओ।

इमा ब्रह्माणि वर्धनाश्विभ्यां सन्तु शन्तमा । या तक्षाम रथाँइवावोचाम बृहन्नमः ।

रथजस्तै मन्त्र र स्तोत्र पनि अश्विनीकुमारहरूकै लागि बनाएका हौं। स्तोत्रमन्त्र उनका निम्ति सुखदायक र प्रेमवर्द्धक होऊन्। हामी नमस्कारपूर्वक स्तोत्र समर्पण गर्दछौं।

[सूक्त - ७४]

ऋषि - पौर आत्रेय। देवता - अश्विनीकुमार। छन्द - अनुष्टुप्।

कूष्ठो देवावश्विनाद्या दिवो मनावसू ।
तच्छ्रवथो वृषण्वसू अत्रिर्वामा विवासति ॥१॥

हे उत्कृष्ट मनसम्पन्न अश्विनीकुमारहरू हो ! द्युलोकबाट आएर यज्ञमा बस। हे धनको वर्षा गर्ने देवताहरू हो ! तिमीहरूका लागि समर्पित अत्रि ऋषिको स्तोत्र सुन।

कुह त्या कुह नु श्रुता दिवि देवा नासत्या ।
कस्मिन्ना यतथो जने को वां नदीनां सचा ॥२॥

हे असत्यरहित दीप्तिमान् अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै कहाँ छौ ? द्युलोकमा कुन ठाउँमा हुन्छौ ? कुन यजमानका घरमा आउँछौ ? कसका स्तुतिमा रमाउँछौ ?

कं याथः कं ह गच्छथः कमच्छा युञ्जाथे रथम् ।
कस्य ब्रह्माणि रण्यथो वयं वामुश्मसीष्टये ॥३॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू कुन यजमानका लागि हिंड्दछौ ? कोसित रहन्छौ ? कसका अगाडि हिंड्न रथ तयार पार्छौ ? कसका स्तोत्रले प्रसन्न हुन्छौ ? तिमीहरूलाई हामी भेट्न चाहन्छौं।

पौरं चिद्ध्युदप्रुतं पौर पौराय जिन्वथः । यदीं गृभीततातये सिंहमिव द्रुहस्पदे ॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू पौर ऋषिका लागि जलयुक्त मेघलाई प्रेरित गर। वनमा व्याधाले सिंह लखेटेझैं तिमीहरू मेघलाई सताओ।

प्र च्यवानाज्जुजुरुषो वव्रिमत्कं न मुञ्चथः ।
युवा यदी कृथः पुनरा काममृण्वे वध्वः ॥५॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरूले बाउरिइसकेका च्यवन ऋषिको कुरूपता कवच उतारेझैं निकालेर फ्याँकिदियौ र उनलाई फेरि युवक बनाइदियौ। त्यसपछि उनी पनि तरुनीले मन पराउने सुन्दर रूपवान् भए।

अस्ति हि वामिह स्तोता स्मसि वां सन्दृशि श्रिये ।
नू श्रुतं म आ गतमवोभिर्वाजिनीवसू ॥६॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू स्तोताका यज्ञमा छौ। यज्ञको समृद्धि बढाउने लक्षमा दृष्टि रहन्। हे सेनारूपी धनले सम्पन्न अश्विनीकुमारहरू हो ! हाम्रो पुकार सुन। आफ्ना संरक्षण साधनका साथ यहाँ आओ।

को वामद्य पुरूणामा वव्ने मर्त्यानाम्।
को विप्रो विप्रवाहसा को यज्ञैर्वाजिनीवसू ॥७॥

हे ज्ञानीहरूबाट वन्दनीय र विपुल सेनारूपी धनले समृद्ध अश्विनीकुमारहरू हो ! अनेकौं प्रजाहरूमध्ये कुन ज्ञानीले तिमीहरूलाई प्रसन्नतापूर्वक स्वीकार गर्दछ ? कुन यजमान तिमीहरूलाई यज्ञद्वारा अति सन्तुष्ट गराउँछ ?

आ वां रथो रथानां येष्ठो यात्वश्विना। पुरू चिदस्मयुस्तिर आङ्गूषो मर्त्येष्वा।

हे अश्विनीकुमारहरू हो ! अन्य देवताको भन्दा बढी वेगवान् तिमीहरूको रथ यता आओस्। मानिसहरूमा हामीलाई रुचाउने, अनेकौं शत्रु संहार गर्ने र यजमानले प्रशंसा गर्ने यो रथ यतातिर आओस्।

शमू षु वां मधूयुवास्माकमस्तु चर्कृतिः।
अर्वाचीना विचेतसा विभिः श्येनेव दीयतम् ॥९॥

हे मधुयुक्त अश्विनीकुमारहरू हो ! तिमीहरूलाई समर्पित गरेको स्तोत्र हाम्रा लागि सुखदायी होस्। हे विशिष्ट ज्ञानसम्पन्न देवताहरू हो ! श्येन पक्षीजस्तै वेगवान् अश्वमा हामीकहाँ आओ।

अश्विना यद्ध कर्हि चिच्छुश्रूयातमिमं हवम्।
वस्वीरू षु वां भुजः पृञ्चन्ति सु वां पृचः ॥१०॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू जहाँसुकै भए पनि हाम्रो आह्वान सुन। हामी यज्ञमा तिमीहरूका लागि उत्तम अन्न राम्ररी मिसाएर तयार गरीकन हविका रूपमा प्रशंसनीय भोज्य पदार्थ बनाएर अर्पण गर्दछौं।

[सूक्त - ७५]

ऋषि - अवस्यु आत्रेय। देवता - अश्विनीकुमार। छन्द - पङ्क्ति।

प्रति प्रियतमं रथं वृषणं वसुवाहनम्।
स्तोता वामश्विनावृषिः स्तोमेन प्रति भूषति माध्वी मम श्रुतं हवम् ॥१॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरूको अत्यन्त प्रिय, बलयुक्त, धनवाहक रथलाई स्तोता ऋषिहरू आफ्ना स्तोत्रले विभूषित गर्दछन्। हे मधुविद्याका ज्ञाताहरू हो ! तिमीहरू हाम्रो आह्वान सुन।

अत्यायातमश्विना तिरो विश्वा अहं सना।
दस्रा हिरण्यवर्तनी सुषुम्ना सिन्धुवाहसा माध्वी मम श्रुतं हवम् ॥२॥

हे अश्विनीकुमारहरू हो ! अन्यत्र नगई हामीकहाँ आओ। हामी शत्रुमाथि विजय पाऔं। शत्रुनाशक, स्वर्णरथ युक्त, उत्तम धनसम्पन्न, नदीझैं प्रवाहमान, हे मधुविद्याविशारद ! तिमीहरू हाम्रो आह्वान सुन।

आ नो रत्नानि बिभ्रतावश्विना गच्छतं युवम्।
रुद्रा हिरण्यवर्तनी जुषाणा वाजिनीवसू माध्वी मम श्रुतं हवम् ॥३॥

स्वर्णरथसम्पन्न, शत्रुपीडक, रत्नधारक, धनधान्ययुक्त, यज्ञप्रेमी हे अश्विनीकुमार ! हाम्रा यज्ञमा आएर प्रतिष्ठित होओ। हे मधुविद्याविशारद ! हाम्रो आह्वान सुन।

सुष्टुभो वां वृषण्वसू रथे वाणीच्याहिता।
उत वां ककुहो मृगः पृक्षः कृणोति वापुषो माध्वी मम श्रुतं हवम् ॥४॥

हे धनवर्षक अश्विनीकुमारहरू हो ! हामी स्तोताहरू तिमीहरूलाई उत्तम स्तुति गर्दछौं। आफ्नो वाणी तिमीहरूका रथमा स्थापित गर्दछौं। तिमीहरूका निम्ति महान् अन्वेषकले हविष्यान्न तयार गर्दछन्। हे मधुविद्याविद् हाम्रो आह्वान सुन।

बोधिन्मनसा रथ्येषिरा हवनश्रुता।
विभिश्च्यवानमश्विना नि याथो अद्वयाविनं माध्वी मम श्रुतं हवम् ॥५॥

हे अश्विनीकुमारहरू हो ! द्रुतगामी रथमा आरूढ हुने र बोधयुक्त मन भएका हुनाले तिमीहरू स्तुति सुन्दछौ। निश्छल मन भएका च्यवन ऋषिका नजिकै अश्व लिएर पुगेका थियौ। हे मधुविद्याका ज्ञाताहरू हो ! हाम्रो आह्वान सुन।

आ वां नरा मनोयुजोऽश्वासः प्रुषितप्सवः।
वयो वहन्तु पीतये सह सुम्नेभिरश्विना माध्वी श्रुतं हवम् ॥६॥

हे नेतृत्वकर्ता अश्विनीकुमारहरू हो ! मनका सङ्केतले नै रथमा नारिने, छिर्के बुट्टा भएका, वेगवान् अश्वले तिमीहरू दुवैलाई सोमपानका निम्ति सम्पूर्ण सुखका साथ हामीतिर ल्याऊन्। हे मधुविद्यामा पारङ्गत देवताहरू हो ! तिमीहरू हाम्रो आह्वान सुन।

अश्विनावेह गच्छतं नासत्या मा वि वेनतम्।
तिरश्चिदर्यया परि वर्तिर्यातमदाभ्या माध्वी मम श्रुतं हवम् ॥७॥

अटल, असत्यविहीन, अश्विनीकुमारहरू हो! तिमीहरू दुवै हामीतिर आओ। हाम्रो निवेदन अस्वीकार नगर। हे सर्वदा विजयशील देवताहरू हो ! तिमीहरू दुवै अत्यन्त दूरका प्रदेशबाट पनि हाम्रा यज्ञशालामा आओ। हे मधुविद्या जान्ने देवताहरू हो ! तिमीहरू हाम्रो आह्वान सुन।

अस्मिन्यज्ञे अदाभ्या जरितारं शुभस्पती।
अवस्युमश्विना युवं गृणन्तमुप भूषथो माध्वी मम श्रुतं हवम् ॥८॥

शुभ कर्मका पालक, अटल अश्विनीकुमारहरू हो ! यस यज्ञमा स्तुति गर्ने अवस्युका नजिकै गएर उनलाई सिँगार। हे मधुविद्याविद् देवताहरू हो ! हाम्रो आह्वान सुन।

अभूदुषा रुशत्पशुराग्निरधाय्यृत्वियः।
अयोजि वां वृषण्वसू रथो दस्रावमर्त्यो माध्वी मम श्रुतं हवम् ॥९॥

हे धनवर्षक, शत्रुनाशक अश्विनीकुमारहरू हो ! उषा प्रकट भएकी छिन्। ऋतुअनुसार तेजस्वी किरण हुने अग्निदेव वेदीमा पूर्ण रूपले स्थापित भइसकेका छन्। तिमीहरूको अनश्वर रथ तयार भएको छ। हे मधुविद्यामा कुशल अश्विनीकुमारहरू हो ! तिमीहरू दुवैले हाम्रो आह्वान सुन।

[सूक्त - ७६]

**ऋषि** - अत्रि भौम। **देवता** - अश्विनीकुमार। **छन्द** - त्रिष्टुप्।

आ भात्यग्निरुषसामनीकमुद्विप्राणां देवया वाचो अस्थुः।
अर्वाञ्चा नूनं रथ्येह यातं पीपिवांसमश्विना घर्ममच्छ ॥१॥

उषाका मुखजस्ता अग्निदेव दीप्तिमान भएका छन् र दिव्य स्तुति पनि प्रारम्भ भयो। हे रथमा विराजित अश्विनीकुमारहरू हो ! हामीलाई दर्शन दिएर यज्ञमा पिउने योग्य सोमका नजिकै उपस्थित हुने कृपा गर।

न संस्कृतं प्र मिमीतो गमिष्ठान्ति नूनमश्विनोपस्तुतेह।
दिवाभिपित्वेऽवसागमिष्ठा प्रत्यवर्तिं दाशुषे शम्भविष्ठा ॥२॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू संस्कारित प्राणीलाई क्षति गर्दैनौ। यज्ञमा उपस्थित तिमीहरूलाई स्तुति गरिएको छ। विहानदेखि हव्य पदार्थ लिएर आउने हविदातालाई तिमीहरू सुख प्रदान गर्दछौ।

उता यातं सङ्गवे प्रातरह्नो मध्यन्दिन उदिता सूर्यस्य।
दिवा नक्तमवसा शन्तमेन नेदानीं पीतिरश्विना ततान ॥३॥

हे अश्विनीकुमारहरू हो ! गाई दुहुने बेलामा, विहान सूर्योदयका समयमा, मध्याह्न कालमा, दिनको प्रखर अवस्थामा अर्थात् दिउँसो वा रातिका सबै समयमा सुखदायी, रक्षा साधनसहित आओ। सोमपान गर्ने बेला अहिले भएको छैन। त्यसैले तिमीहरू चाँडै आओ।

इदं हि वां प्रदिवि स्थानमोक इमे गृहा अश्विनेदं दुरोणम्।
आ नो दिवो बृहतः पर्वतादाद्भ्यो यातमिषमूर्जं वहन्ता ॥४॥

हे अश्विनीकुमारहरू हो ! यो उत्तर वेदी तिमीहरूको पुरानो निवास योग्य स्थान हो। यी सम्पूर्ण गृह र आश्रयस्थान पनि तिमीहरूकै हुन्। तिमीहरू पानीले भरिएको मेघद्वारा अन्तरिक्षबाट हाम्रा लागि अन्न र बल लिएर यहाँ आओ।

समश्विनोरवसा नूतनेन मयोभुवा सुप्रणीती गमेम।
आ नो रयिं वहतमोत वीराना विश्वान्यमृता सौभगानि ॥५॥

हामी अश्विनीकुमारका मङ्गलकारी, सुखकारी, कृपापूर्ण र नयाँनौला रक्षणसाधनले सम्पन्न होऔं। अमर अश्विनीकुमारहरू हो ! हामीलाई उत्तम ऐश्वर्य, वीर पुत्र र सम्पूर्ण सौभाग्य प्रदान गर।

[सूक्त – ७७]

**ऋषि** – अत्रि भौम। **देवता** – अश्विनीकुमार। **छन्द** – त्रिष्टुप्।

**प्रातर्यावाणा प्रथमा यजध्वं पुरा गृध्रादररुषः पिबातः।**
**प्रातर्हि यज्ञमश्विना दधाते प्र शंसन्ति कवयः पूर्वभाजः ॥१॥**

हे ऋत्विक्हरू हो ! बिहानीपख अरू देवताभन्दा पहिले आउने अश्विनीकुमारलाई पूजा गर। दान नगर्ने लोभी राक्षसभन्दा पहिले उनीहरू सोमपान गर्दछन्। उनीहरू उचित रूपले यज्ञ धारण गर्दछन्। उहिलेका ऋषिहरू उनीहरूलाई प्रशंसा गर्दछन्।

**प्रातर्यजध्वमश्विना हिनोत न सायमस्ति देवया अजुष्टम्।**
**उतान्यो अस्मद्यजते वि चावः पूर्वो यजमानो वनीयान् ॥२॥**

हे ऋत्विक्हरू हो! अश्विनीकुमारका लागि बिहानीपख यजन गर। उनीहरूलाई हव्य आदि प्रदान गर। साँझपख दिइएको हव्य देवताका लागि सेवनीय हुँदैन र देवताकहाँ जाँदैन। हामीभन्दा पहिले अरू कसैले यजन गर्दछ भने उसले सबै देवतालाई सन्तुष्ट गर्दछ। हामीभन्दा पहिले यजन गर्ने होता कोही छ भने ऊ नै देवताहरूको सबैभन्दा प्रिय हुन्छ।

**हिरण्यत्वङ्मधुवर्णो घृतस्नुः पृक्षो वहन्ना रथो वर्तते वाम्।**
**मनोजवा अश्विना वातरंहा येनातियाथो दुरितानि विश्वा ॥३॥**

हे अश्विनीकुमार हो ! तिमीहरूको सुनले मोडिएको, सुन्दर रूपरङ्गको, जल बर्साउने, अन्न धारण गर्ने, मनजस्तै वेगवान्, वायुजस्तै चलायमान रथ हामीतिर आउँछ। सम्पूर्ण बाधा पार गर्दै त्यसै रथमा तिमीहरू आओ।

**यो भूयिष्ठं नासत्याभ्यां विवेष चनिष्ठं पित्वो ररते विभागे।**
**स तोकमस्य पीपरच्छमीभिरनूर्ध्वभासः सदमित्तुतुर्यात् ॥४॥**

जुन यजमान यज्ञमा हविको भाग लगाउने बेलामा अश्विनीकुमारलाई मनग्गे हव्य आदि प्रदान गर्दछ, उसले आफ्ना पुत्रलाई शुभ कर्मले पालन गर्दछ। जो यज्ञ आदि कर्मका निम्ति अग्नि बाल्दैन, ऊ सधैं हिंसित हुन्छ।

**समश्विनोरवसा नूतनेन मयोभुवा सुप्रणीती गमेम।**
**आ नो रयिं वहतमोत वीराना विश्वान्यमृता सौभगानि ॥५॥**

हामी अश्विनीकुमारका मङ्गलकारी, सुखकारी, कृपापूर्ण र नयाँनौला रक्षणसाधनले सम्पन्न होऔं। अमर अश्विनीकुमार हो ! तिमीहरू हामीलाई उत्तम ऐश्वर्य, वीर पुत्र र सम्पूर्ण सौभाग्यहरू प्रदान गर।

[सूक्त – ७८]

**ऋषि** – सप्तवध्रि आत्रेय। **देवता** – अश्विनीकुमार। **छन्द** – अनुष्टुप् उष्णिक्।

**अश्विनावेह गच्छतं नासत्या मा वि वेनतम्। हंसाविव पततमा सुताँ उप ॥१॥**

हे अश्विनीकुमारहरू हो! तिमीहरू हाम्रा यज्ञमा आओ। दुई वटा सेता हाँस पानीतिर गएझैं तिमीहरू दुवै सोमका नजिकै आओ।

**अश्विना हरिणाविव गौराविवानु यवसम्। हंसाविव पततमा सुताँ उप ॥२॥**

हे अश्विनीकुमारहरू हो! हरिण आदि मृगहरू घाँस खान कुदेझैं र पानीमा खेल्नका लागि हाँस ओर्लिएझैं तिमीहरू दुवै पेलेर तयार गरेको सोमका नजिक आओ।

**अश्विना वाजिनीवसू जुषेथां यज्ञमिष्टये। हंसाविव पततमा सुताँ उप ॥३॥**

हे सेना एवं धन राख्ने अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै हामीले खोजेको कुरो पूरा गर्नका लागि यज्ञ स्वीकार गर। पानीमा खेल्नका लागि हाँस ओर्लिएझैं तिमीहरू दुवै पेलेर तयार गरेको सोमका नजिक आओ।

**अत्रिर्यद्वामवरोहन्नृबीसमजोहवीन्नाधमानेव योषा।**
**श्येनस्य चिज्जवसा नूतनेनागच्छतमश्विना शन्तमेन ॥४॥**

हे अश्विनीकुमार हो ! विलाप गर्न लागेकी स्त्रीझैं अत्रि ऋषिले बाक्लो अन्धकारले छोपिएका संसारबाट मुक्ति पाउन तिमीहरूलाई आह्वान गर्दा सुखकारी र नयाँ रथमा बाजपक्षीझैं वेगवान् रूपमा तिमीहरू आएका थियौ।

वि जिहीष्व वनस्पते योनिः सूष्यन्त्या इव।
श्रुतं मे अश्विना हवं सप्तवध्रिं च मुञ्चतम् ॥५॥

हे वनस्पतिदेव ! तिमी प्रसवको तयारीमा रहेको योनिजस्तै विस्तृत होऊ। हे अश्विनीकुमार हो ! हाम्रो आह्वान सुनेर तिमीहरू आओ र सप्तवध्रि भन्ने मेरो नामजस्तै सात तिरबाट बाँधिएका प्राणीलाई मुक्त गराओ।

भीताय नाधमानाय ऋषये सप्तवध्रये।
मायाभिरश्विना युवं वृक्षं सं च वि चाचथः ॥६॥

हे अश्विनीकुमार हो ! सात तिरबाट बाँधिएर डराएका प्राणीले मुक्तिका लागि निवेदन गरेपछि तिमीहरू दुवैले आफ्ना कुशल मायाले वनस्पतिलाई भेदन गरिदियौ।

यथा वातः पुष्करिणीं समिङ्गयति सर्वतः।
एवा ते गर्भ एजतु निरैतु दशमास्यः ॥७॥

वायुले तलाउ हल्लाएझैं तिमीहरूको दस महिना पूरा भएको गर्भ स्पन्दित भएर प्रकट होस्।

यथा वातो यथा वनं यथा समुद्र एजति।
एवा त्वं दशमास्य सहावेहि जरायुणा ॥८॥

वायुले वन र समुद्र कम्पित गराएझैं दस महिनासम्म गर्भमा रहेको प्राणी आफ्नो छिप्पिने उमेर पूरा गर्नासाथ बाहिर आओस्।

दश मासाञ्छशयानः कुमारो अधि मातरि।
निरैतु जीवो अक्षतो जीवो जीवन्त्या अधि ॥९॥

गर्भमा दस महिनासम्म सुतेका बालकलाई जीवित र क्षतिरहित अवस्थामा आमाले सुखपूर्वक जन्माऊन्।

[सूक्त – ७९]

ऋषि – सत्यश्रवा आत्रेय। देवता – उषा। छन्द – पङ्क्ति।

महे नोअद्य बोधयोषो राये दिवित्मती।
यथा चिन्नो अबोधयः सत्यश्रवसि वाय्ये सुजाते अश्वसूनृते ॥१॥

हे सुख प्रकट गराउने उषादेवी ! पहिलेको जस्तै हामीलाई ज्ञानयुक्त गराऊ, ऐश्वर्य प्राप्तिको चेतना देऊ। हे श्रेष्ठ कुलकी सत्य भाषिणी ! वय्यका पुत्र सत्यश्रवालाई आफ्ना कृपाको पात्र बनाऊ।

या सुनीथे शौचद्रथे व्यौच्छो दुहितर्दिवः।
सा व्युच्छ सहीयसि सत्यश्रवसि वाय्ये सुजाते अश्वसूनृते ॥२॥

हे द्युलोककी पुत्री उषादेवी ! तिमी शुचद्रथका पुत्र सुनीथका लागि अन्धकार हटाएर प्रकट भयौ। अब तिमी वय्यका पुत्र सत्यश्रवामाथि उपकारको वर्षा गर।

सा नो अद्याभरद्वसुर्व्युच्छा दुहितर्दिवः।
यो व्यौच्छः सहीयसि सत्यश्रवसि वाय्ये सुजाते अश्वसूनृते ॥३॥

हे आदित्यपुत्री उषादेवी ! हामीलाई मनग्गे धन देऊ र अन्धकार हटाऊ। हे बलयुक्त, अन्धकारनाशक, प्रसिद्ध, सत्यरूपिणी उषादेवी ! वय्यपुत्र सत्यश्रवामाथि कृपा गर।

अभि ये त्वा विभावरि स्तोमैर्गृणन्ति वह्नयः।
मघैर्मघोनि सुश्रियो दामन्वन्तः सुरातयः सुजाते अश्वसूनृते ॥४॥

हे प्रकाशसम्पन्न उषादेवी ! स्तोताहरू दीप्तिमान्, उत्तम स्तोत्रले तिम्रो स्तुति गर्दछन्। उनीहरू ऐश्वर्यद्वारा उत्तम शोभावान् र उत्तम दानशील छन्। हे धनकी अधिकारिणी र जन्मदेखि नै शोभासम्पन्न उषादेवी ! स्तोताहरू अश्व प्राप्तिका लागि तिमीलाई उत्तम स्तुति निवेदन गर्दछन्।

यच्चिद्धि ते गणा इमे छदयन्ति मघत्तये।
परि चिद्वष्टयो दधुर्ददतो राधो अह्रयं सुजाते अश्वसूनृते ॥५॥

हे उषादेवी ! जुन स्तोता धन प्राप्तिका लागि तिम्रो स्तवन गर्दछन्, उनीहरू निश्चय पनि ऐश्वर्य धारण गर्दछन् र अक्षय हव्यका रूपमा धन दिइरहन्छन्। हे धनकी अधिकारिणी, जन्मदेखि नै शोभासम्पन्न उषादेवी ! स्तोताहरू अश्व प्राप्तिका लागि तिमीलाई उत्तम स्तुति निवेदन गर्दछन्।

ऐषु धा वीरवद्यश उषो मघोनि सूरिषु।
ये नो राधांस्यह्रया मघवानो अरासत सुजाते अश्वसूनृते ॥६॥

हे धनकी अधिकारिणी उषादेवी ! स्तोताहरूलाई उत्तम र वीर पुत्रले युक्त अन्न प्रदान गर। त्यसबाट उनीहरू धनसम्पन्न भएर हामीलाई विपुल धन दिऊन्। हे धनकी अधिकारिणी, जन्मदेखि नै शोभासम्पन्न उषादेवी ! स्तोताहरू अश्व प्राप्तिका लागि तिमीलाई उत्तम स्तुति निवेदन गर्दछन्।

तेभ्यो द्युम्नं बृहद्यश उषो मघोन्या वह।
ये नो राधांस्यश्व्या गव्या भजन्त सूरयः सुजाते अश्वसूनृते ॥७॥

हे धनकी अधिकारिणी उषादेवी ! जुन यजमान स्तोतालाई गाई, अश्वले युक्त धन प्रदान गर्दछन्, उनीहरूलाई तिमी तेजस्वी धन र प्रशस्त अन्न प्रदान गर। हे धनकी अधिकारिणी, जन्मदेखि नै शोभासम्पन्न उषादेवी ! स्तोताहरू अश्व प्राप्तिका लागि तिमीलाई उत्तम स्तुति निवेदन गर्दछन्।

उत नो गोमतीरिष आ वहा दुहितर्दिवः।
साकं सूर्यस्य रश्मिभिः शुक्रैः शोचद्भिरर्चिभिः सुजाते अश्वसूनृते ॥८॥

हे सूर्यपुत्री उषादेवी ! सूर्य एवं अग्निको शुभ्र, प्रदीप्त रश्मिसँगै हामीतिर आऊ र गाईसहित अन्न प्रदान गर। हे धनकी अधिकारिणी, जन्मदेखि नै शोभासम्पन्न उषादेवी ! स्तोताहरू अश्व प्राप्तिका लागि तिमीलाई उत्तम स्तुति निवेदन गर्दछन्।

व्युच्छा दुहितर्दिवो मा चिरं तनुथा अपः।
नेत्त्वा स्तेनं यथा रिपुं तपाति सूरो अर्चिषा सुजाते अश्वसूनृते ॥९॥

हे प्रकाशसम्पन्न सूर्यपुत्री उषादेवी ! हाम्रा काममा ढिलो नगरिदेऊ। राजाले शत्रु र चोरलाई सताएझैं सूर्यदेवका तेजले तिमीलाई नसताओस्। हे धनकी अधिकारिणी, जन्मदेखि नै शोभासम्पन्न उषादेवी ! स्तोताहरू अश्व प्राप्तिका लागि तिमीलाई उत्तम स्तुति निवेदन गर्दछन्।

एतावद्वेदुषस्त्वं भूयो वा दातुमर्हसि।
या स्तोतृभ्यो विभावर्युच्छन्ती न प्रमीयसे सुजाते अश्वसूनृते ॥१०॥

हे उषादेवी ! तिमी इच्छा लागेको भन्दा धेरै धन प्रदान गर्न सक्छ्यौ। तिमी स्तोताका मनको अन्धकार हटाएर उनीहरूको दुःख नाश गर्छ्यौ। हे धनकी अधिकारिणी, जन्मदेखि नै शोभासम्पन्न उषादेवी ! स्तोताहरू अश्व प्राप्तिका लागि तिमीलाई उत्तम स्तुति निवेदन गर्दछन्।

[सूक्त - ८०]

ऋषि – सत्यश्रवा आत्रेय। देवता – उषा। छन्द – त्रिष्टुप्।

द्युतद्यामानं बृहतीमृतेन ऋतावरीमरुणप्सुं विभातीम्।
देवीमुषसं स्वरावहन्तीं प्रति विप्रासो मतिभिर्जरन्ते ॥१॥

दीप्तिमान् रथमा आरोहित रहने, सर्वव्यापिनी, यज्ञद्वारा पूजनीय, अरुणिम वर्णयुक्त, दीप्तिमती र सूर्यदेवभन्दा अगाडि चल्ने उषादेवीप्रति ज्ञानीहरू विचारपूर्वक श्रेष्ठ स्तुति अर्पित गर्दछन्।

एषा जनं दर्शता बोधयन्ती सुगान्पथः कृण्वती यात्यग्रे।
बृहद्रथा बृहती विश्वमिन्वोषा ज्योतिर्यच्छत्यग्रे अह्नाम् ॥२॥

दर्शनीय उषादेवी सुतेकालाई जगाउँदै र मार्ग सुगम बनाउँदै अत्यन्त व्यापक रथमा चढेर सूर्यदेवका अघि हिँड्दछिन्। महान् र विश्वमा व्यापक रहने उषादेवी बिहानै प्रकाश फिँजाउँछिन्।

एषा गोभिररुणेभिर्युजानास्रेधन्ती रयिमप्रायु चक्रे।
पथो रदन्ती सुविताय देवी पुरुष्टुता विश्ववारा वि भाति ॥३॥

उषादेवी अरुण आभा भएको साँढे सधाएर अक्षय धन स्थायी राख्दछिन्। अत्यन्त दीप्तिसम्पन्न, धेरै तिरबाट स्तुति गरिएकी र सबैबाट रुचाइने यी देवी मार्गमा उज्यालो पार्दै स्वयं उज्यालो देखिन्छिन्।

एषा व्येनी भवति द्विबर्हा आविष्कृण्वाना तन्वं पुरस्तात्।
ऋतस्य पन्थामन्वेति साधु प्रजानतीव न दिशो मिनाति ॥४॥

उषादेवी रात्रि र दिनका दुवै समयमा द्युलोकका माथि र तल गमन गर्दै पूर्व दिशामा प्रकट हुन्छिन्। यिनले सूर्यदेवको मार्ग अनुसरण गर्छिन्। ज्ञानसम्पन्न स्त्रीजस्तै यिनी पनि कुनै दिशामा झुक्किन्नन्।

एषा शुभ्रा न तन्वो विदानोर्ध्वेव स्नाती दृशये नो अस्थात्।
अप द्वेषो बाधमाना तमांस्युषा दिवो दुहिता ज्योतिषागात् ॥५॥

नुहाइसकेर पोखरीबाट बाहिर आउँदै गरेकी स्त्रीजस्ती उषादेवी आफ्नो शरीर प्रकट गर्दै हाम्रा अगाडि पूर्वबाट उदाउँछिन्। सूर्यपुत्री उषादेवी द्वेषरूपी अन्धकार चिरेर प्रकाशसँगै आउँछिन्।

एषा प्रतीची दुहिता दिवो नॄन्योषेव भद्रा नि रिणीते अप्सः।
व्यूर्ण्वती दाशुषे वार्याणि पुनर्ज्योतिर्युवतिः पूर्वथाकः ॥६॥

पश्चिमतिर जाँदै गरेकी सूर्यपुत्री उषादेवीले आफ्नो रूप कल्याणकारी स्त्रीको जस्तै देखाउँछिन्। सधैँकी तरुणी उषादेवी आफ्ना ज्योतिको रूप पहिलेकै जस्तो गरी प्रकट गर्दछिन्। हविदाता यजमानलाई मन पर्ने धन यिनले प्रदान गर्दछिन्।

## [सूक्त - ८१]

**ऋषि** – श्यावाश्व आत्रेय। **देवता** – सविता। **छन्द** – जगती।

युञ्जते मन उत युञ्जते धियो विप्रा विप्रस्य बृहतो विपश्चितः।
वि होत्रा दधे वयुनाविदेक इन्मही देवस्य सवितुः परिष्टुतिः ॥१॥

एक्लै यज्ञ धारण गर्ने, मार्गको ज्ञान भएका सवितादेव महान् स्तुतिका पात्र हुन्। अति बुद्धिमान् र ज्ञानी मानिस आफ्नो मन र बुद्धि उनै प्रेरक सवितादेवमा योजित गर्दछन्।

विश्वा रूपाणि प्रति मुञ्चते कविः प्रासावीद्भद्रं द्विपदे चतुष्पदे।
वि नाकमख्यत्सविता वरेण्योऽनु प्रयाणमुषसो वि राजति ॥२॥

अत्यन्त मेधावी सवितादेव आफ्ना सबै रूप प्रकट गर्दछन्। उनी मानिस र पशुका कल्याणकारी हुन्। सबैले रुचाएका सवितादेव द्युलोकमा प्रकाश छर्दछन्। उषादेवी गएपछि यिनी प्रकट हुन्छन्।

यस्य प्रयाणमन्वन्य इद्ययुर्देवा देवस्य महिमानमोजसा।
यः पार्थिवानि विममे स एतशो रजांसि देवः सविता महित्वना ॥३॥

अग्नि आदि सम्पूर्ण देवताहरू, सवितादेवको महिमायुक्त मार्ग अनुसरण गरेर ओज प्राप्त गर्दछन्। सवितादेवले आफ्ना महत्ता पृथ्वी आदि लोकहरूमा व्याप्त गरेका छन्। उनी देव अत्यन्त शोभायमान छन्।

उत यासि सवितस्त्रीणि रोचनोत सूर्यस्य रश्मिभिः समुच्यसि।
उत रात्रीमुभयतः परीयस उत मित्रो भवसि देव धर्मभिः ॥४॥

हे सवितादेव ! तिमी आफ्ना तीनै वटा प्रकाशित लोकमा गमन गर्दछौ र सूर्यरश्मिले संयुक्त हुन्छौ। तिमी रातका दुवै छेउलाई प्रभावित गर्दै आफ्नो यात्रा गर्दछौ। हे देवता ! तिमी कल्याणकारी कार्यमा संसारका मित्रजस्तै हुन्छौ।

उतेशिषे प्रसवस्य त्वमेक इदुत पूषा भवसि देव यामभिः।
उतेदं विश्वं भुवनं वि राजसि श्यावाश्वस्ते सवितः स्तोममानशे ॥५॥

हे सवितादेव ! तिमी नै सम्पूर्ण प्रकट संसारका एक्ला अधीश्वर हौ। तिमी आफ्ना गमन सामर्थ्यले जगत्का पोषकजस्तै छौ। तिमी सम्पूर्ण लोकमा विशिष्ट रूपले देदीप्यमान छौ। तेजस्वी अश्व र पराक्रमयुक्त श्यावश्व ऋषि तिम्रा लागि स्तोत्र समर्पित गर्दछन्।

## [सूक्त - ८२]

**ऋषि** – श्यावाश्व आत्रेय। **देवता** – सविता। **छन्द** – जगती अनुष्टुप्।

तत्सवितुर्वृणीमहे वयं देवस्य भोजनम्। श्रेष्ठं सर्वधातमं तुरं भगस्य धीमहि ॥

हामी सवितादेवको प्रसिद्ध र उपभोग्य ऐश्वर्य माग गर्दछौँ र भगदेवको श्रेष्ठ, सर्वधारक, शत्रुविनाशक ऐश्वर्य पनि धारण गर्न चाहन्छौँ।

अस्य हि स्वयशस्तरं सवितुः कच्चन प्रियम्। न मिनन्ति स्वराज्यम् ॥२॥

आफ्ना यश विस्तृत गराउने सवितादेवको अत्यन्त प्रिय र प्रकाशित ऐश्वर्य कसैले नाश गर्न सक्दैन।

स हि रत्नानि दाशुषे सुवाति सविता भगः। तं भागं चित्रमीमहे ॥३॥

सविता र भगदेव हविदाता यजमानलाई उत्तम वरणीय रत्न प्रदान गर्दछन्। हामी उनै देवतासित त्यस्तै विलक्षण ऐश्वर्य माग गर्दछौँ।

अद्या नो देव सवितः प्रजावत्सावीः सौभगम्। परा दुःष्वप्न्यं सुव ॥४॥

हे सवितादेव ! आज हामीलाई पुत्रपौत्रसहितको पवित्र ऐश्वर्य प्रदान गर। दुःखदायी स्वप्नजस्तो दरिद्रता हामीबाट पर हटाऊ।

विश्वानि देव सवितर्दुरितानि परा सुव। यद्भद्रं तन्न आ सुव ॥५॥

हे सवितादेव ! हाम्रा सबै दुःख तिमी हटाइदेऊ र हाम्रा निम्ति कल्याणकारी जे हुन्छ, त्यसैलाई हामीतिर प्रेरित गर।

अनागसो अदितये देवस्य सवितुः सवे। विश्वा वामानि धीमहि ॥६॥

सवितादेवको आज्ञामा रहेर माता अदितिका लागि निरपराधी रहौं र इच्छा लागेको सम्पूर्ण धन हामी प्राप्त गरौं।

आ विश्वदेवं सत्पतिं सूक्तैरद्या वृणीमहे। सत्यसवं सवितारम् ॥७॥

सबैका देवता, सत्यनिष्ठामा रहनेहरूलाई पालन गर्ने, सत्यव्रतीका रक्षक सवितादेवलाई आज हामी सूक्तका माध्यमबाट यज्ञमा बोलाउँछौं।

य इमे उभे अहनी पुर एत्यप्रयुच्छन्। स्वाधीर्देवः सविता ॥८॥

उत्तम कर्म गर्दै जुन सवितादेव दिन र रातका सन्धिकालमा गमन गर्दछन्, हामी उत्तम स्तोत्रले उनको स्वागत गर्दछौं।

य इमा विश्वा जातान्याश्रावयति श्लोकेन। प्र च सुवाति सविता ॥९॥

जुन सवितादेव सम्पूर्ण प्राणीलाई उत्तम कर्ममा प्रेरित गर्दछन् र तिनीहरूलाई आफ्नो यश सुनाउँछन् तिनको आह्वान गर्दछौं।

[सूक्त - ८३]

ऋषि - अत्रि भौम। देवता - पर्जन्य। छन्द - त्रिष्टुप् जगती अनुष्टुप्।

अच्छा वद तवसं गीर्भिराभिः स्तुहि पर्जन्यं नमसा विवास।
कनिक्रदद्वृषभो जीरदानू रेतो दधात्योषधीषु गर्भम् ॥१॥

हे यजमानहरू हो ! बलसम्पन्न पर्जन्यदेवलाई स्तुति गर। हव्य आदि र उत्तम वाणीले उनलाई स्तवन गर। यी देवता जलको वर्षा गर्ने, दानशील र गर्जनकारी छन्। यिनी औषधिरूपी वनस्पतिलाई गर्भधारण गराउँछन्।

वि वृक्षान् हन्त्युत हन्ति रक्षसो विश्वं बिभाय भुवनं महावधात्।
उतानागा ईषते वृष्ण्यावतो यत्पर्जन्यः स्तनयन् हन्ति दुष्कृतः ॥२॥

पर्जन्यदेव अनुचित वृक्ष विनाश गर्दछन्, राक्षसको हनन गर्दछन् र आफ्ना भयङ्कर आघातले सम्पूर्ण संसारलाई भयाक्रान्त गराउँछन्। गर्जन गर्दै यिनी पापीको विनाश गर्दछन् र जल वर्षा गरेर निर्धाको रक्षा गर्दछन्।

रथीव कशयाश्वाँ अभिक्षिपन्नाविर्दूतान्कृणुते वर्ष्याँ३ अह।
दूरात्सिंहस्य स्तनथा उदीरते यत्पर्जन्यः कृणुते वर्ष्यं१ नभः ॥३॥

जसरी रथीले आफ्नो घोडा चाबुकले हिर्काएर उत्तेजित गराउँछ उसै गरी पर्जन्यदेव गर्जनकारी शब्दले मेघलाई प्रेरित गर्दछन्। जलराशिले मेघ पूर्ण भएपछि सिंहको जस्तै यिनले गर्जना गरेको परसम्म सुनिन्छ।

प्र वाता वान्ति पतयन्ति विद्युत उदोषधीर्जिहते पिन्वते स्वः।
इरा विश्वस्मै भुवनाय जायते यत्पर्जन्यः पृथिवीं रेतसावति ॥४॥

जलराशि युक्त पर्जन्य पृथ्वीतिर ओर्लिंदा वायु विशेष प्रवाहयुक्त हुन्छ। बिजुली चम्किन्छ र औषधिका रूपमा वनस्पतिको वृद्धि हुन्छ। आकाश चुहिन्छ र यो पृथ्वी सम्पूर्ण जगत्को हितका लागि समृद्ध हुन्छ।

यस्य व्रते पृथिवी नन्नमीति यस्य व्रते शफवज्जर्भुरीति।
यस्य व्रत ओषधीर्विश्वरूपाः स नः पर्जन्य महि शर्म यच्छ ॥५॥

हे पर्जन्यदेव ! तिम्रा कर्मको कारण पृथ्वी उत्पादनशील हुन्छ र सबै प्राणीले पोषण प्राप्त गर्दछन्। तिम्रा कर्मले नै औषधिरूपी वनस्पतिले विभिन्न रूप धारण गर्दछन्। हे देवता ! हामीलाई महान सुख प्रदान गर।

दिवो नो वृष्टिं मरुतो ररीध्वं प्र पिन्वत वृष्णो अश्वस्य धाराः ।
अर्वाङेतेन स्तनयित्नुनेह्यपो निषिञ्चन्नसुरः पिता नः ॥६॥

हे मरुत्हरू हो ! हाम्रा लागि वर्षा गर। वर्षणशील मेघका जलधाराले हामीलाई पोषण देओस्। हे पर्जन्यदेव ! तिमी गर्जनशील मेघसँगै जल सेचन गर्दै हामीतिर आऊ। तिमी हाम्रा पिताजस्तै प्राणवर्धक र पोषणकर्ता हौ।

अभि क्रन्द स्तनय गर्भमा धा उदन्वता परि दीया रथेन।
दृतिं सु कर्ष विषितं न्यञ्चं समा भवन्तूद्वतो निपादाः ॥७॥

हे पर्जन्यदेव ! गडगड ध्वनिले गर्जंदै औषधिरूपी वनस्पतिमा गर्भ स्थापित गराऊ। रथमा पानी बोकेर आऊ। पानीले भरिएका मेघको मुख तलतिर पार र त्यसलाई खाली गराऊ। त्यसले अग्ला र होचा सबै ठाउँ उस्तै हुन सकून्।

महान्तं कोशमुदचा नि षिञ्च स्यन्दन्तां कुल्या विषिताः पुरस्तात्।
घृतेन द्यावापृथिवी व्युन्धि सुप्रपाणं भवत्वघ्न्याभ्यः ॥८॥

हे पर्जन्यदेव ! आफ्नो जलरूपी महान् कोश खोल र तलतिर बगाऊ। त्यसो भएपछि जलले परिपूर्ण नदी निर्बाध भएर अगाडितिर प्रवाहित होऊन्। जलराशिले द्यावापृथिवी तिमी परिपूर्ण गराऊ। त्यसो भएपछि गाईले पानी खान पाऊन्।

यत्पर्जन्य कनिक्रदत्स्तनयन् हंसि दुष्कृतः।
प्रतीदं विश्वं मोदते यत्किं च पृथिव्यामधि ॥९॥

हे पर्जन्यदेव ! गडगड ध्वनिका साथ तिमी पापी मेघलाई फोर्दछौ, त्यसपछि सम्पूर्ण संसार र यसमा आश्रित प्राणीहरू अत्यन्त खुसी हुन्छन्।

अवर्षीर्वर्षमुदु षू गृभायाकर्धन्वान्यत्येतवा उ।
अजीजन ओषधीर्भोजनाय कमुत प्रजाभ्योऽविदो मनीषाम् ॥१०॥

हे पर्जन्यदेव ! तिमीले मनग्गे वर्षा गराएका छौ। अब वर्षा रोक। मरुभूमिमा पनि तिमीले पानी पूरा गरायौ। सुखकर उपभोगका लागि तिमीले औषधिरूपी वनस्पति उत्पन्न गरेका छौ। आफ्ना सन्तानद्वारा उत्तम स्तुति पाएका छौ।

[सूक्त - ८४]

ऋषि - अत्रि भौम। देवता - पृथिवी। छन्द - अनुष्टुप्।

बळित्था पर्वतानां खिद्रं बिभर्षि पृथिवि।
प्र या भूमिं प्रवत्वति मह्ना जिनोषि महिनि ॥१॥

हे उत्तम गुण र महिमावती पृथिवीदेवी ! तिमी भूमिमा चर्ने प्राणीलाई आफ्ना सामर्थ्यले पुष्ट गराउँछ्यौ र अत्यन्त फैलिएका भारी पर्वतसमूहलाई पनि बोक्दछ्यौ।

स्तोमासस्त्वा विचारिणि प्रति ष्टोभन्त्यक्तुभिः।
प्र या वाजं न हेषन्तं पेरुमस्यस्यर्जुनि ॥२॥

हे विविध रूपमा भ्रमण गर्ने र शुभ्र वर्ण भएकी पृथिवीदेवी ! अश्वजस्तै भयङ्कर शब्द गर्ने मेघलाई वर्षा गर्नका लागि तिमी निम्त्याउँछ्यौ। त्यति बेला स्तोताहरू तिमीप्रति उत्तम स्तोत्रले स्तुति गर्दछन्।

दृळहा चिद्या वनस्पतीन्क्ष्मया दर्धर्ष्योजसा।
यत्ते अभ्रस्य विद्युतो दिवो वर्षन्ति वृष्टयः ॥३॥

हे पृथिवीमाता ! अन्तरिक्षमा रहेका मेघबाट विद्युत्सँग वर्षा हुँदा तिमी आफ्ना बलिया सामर्थ्यले वनस्पतिलाई धारण गर्दछ्यौ।

[सूक्त - ८५]

ऋषि - अत्रि भौम। देवता - वरुण। छन्द - त्रिष्टुप्।

प्र सम्राजे बृहदर्चा गभीरं ब्रह्म प्रियं वरुणाय श्रुताय।
वि यो जघान शमितेव चर्मोपस्तिरे पृथिवीं सूर्याय ॥१॥

हे अत्रिका वंशजहरू हो ! विशिष्ट प्रकाशमान, प्रसिद्ध वरुणदेवका लागि अत्यन्त विस्तृत, गम्भीर र प्रीतिकर स्तुति गर। व्याधाले पशुको छाला फिँजाएझैँ देवताहरूले सूर्यदेवलाई भ्रमण गर्नका लागि आकाश विस्तृत गरेका छन्।

वनेषु व्य१न्तरिक्षं ततान वाजमर्वत्सु पय उस्रियासु।
हृत्सु क्रतुं वरुणो अप्स्व१ग्निं दिवि सूर्यमदधात्सोममद्रौ ॥२॥

वरुणदेवले वनका वृक्षका टुप्पामा अन्तरिक्ष विस्तृत गराए। अश्व या मानिसमा वीर्य वृद्धि गरे, गाईमा दुध स्थापित गरे, हृदयमा सङ्कल्पशक्ति भएको मन बनाए, प्राणीमा पचाउने जठराग्नि स्थापित गरे। द्युलोकमा सूर्यदेव र पर्वतमा सोम उत्पन्न गरे।

नीचीनबारं वरुणः कवन्धं प्र ससर्ज रोदसी अन्तरिक्षम्।
तेन विश्वस्य भुवनस्य राजा यवं न वृष्टिर्व्युनत्ति भूम ॥३॥

वरुणदेवताले द्यावापृथिवी र अन्तरिक्षका प्राणीको हितका लागि मेघलाई उँधोमुन्टो पारेर पानीलाई मुक्त गराए। वर्षाका पानीले जौ आदि अन्न खँदिलो भयो र देवताहरूले वर्षाका त्यही पानीले भूमिलाई उर्वर बनाए।

उनत्ति भूमिं पृथिवीमुत द्यां यदा दुग्धं वरुणो वष्ट्यादित्।
समभ्रेण वसत पर्वतासस्तविषीयन्तः श्रथयन्त वीराः ॥४॥

वरुणदेवता वर्षारूपी जलको इच्छा गर्दछन्। उनी पृथिवी, अन्तरिक्ष र आकाशमा जल सेचन गर्दछन्। पर्वतका शिखरहरू मेघले ढाकिन्छन् र मरुत्हरू आआफ्ना सामर्थ्यले उत्साहित भएर मेघलाई खुकुल्याउँछन्।

इमामू ष्वासुरस्य श्रुतस्य महीं मायां वरुणस्य प्र वोचम्।
मानेनेव तस्थिवाँ अन्तरिक्षे वि यो ममे पृथिवीं सूर्येण ॥५॥

वरुणदेवताले सूर्यदेवलाई अन्तरिक्ष र पृथ्वी नाप्ने मापदण्डजस्तो बनाए। वरुणले नै सूर्यका किरणद्वारा अन्तरिक्ष र पृथ्वीलाई प्रभावित गराए। उनै प्राणप्रदाता एवं प्रसिद्ध वरुणदेवको महान् क्षमतालाई हामी प्रशंसा गर्दछौं।

इमामू नु कवितमस्य मायां महीं देवस्य नकिरा दधर्ष।
एकं यदुद्ना न पृणन्त्येनीरासिञ्चन्तीरवनयः समुद्रम् ॥६॥

निरन्तर सेचन गर्ने प्रवाहमान महान् नदीहरूले आफ्ना जलबाट एउटा समुद्रलाई पनि भराउन नसकेभैँ ज्ञानसम्पन्न वरुणदेवको महान् क्षमतालाई कसैले जित्न सक्दैन।

अर्यम्यं वरुण मित्र्यं वा सखायं वा सदमिद् भ्रातरं वा।
वेशं वा नित्यं वरुणारणं वा यत्सीमागश्चकृमा शिश्रथस्तत् ॥७॥

हे सधैं सबैले खोज्ने गरिएका वरुणदेव ! यदि हामीले दाताका रूपमा रहेका आफ्ना मित्र, साथी, दाजुभाइ, सँगै रहने छिमेकी अथवा निमुखा व्यक्तिहरूप्रति कुनै बेला अपराध गरेको भए त्यस अपराधबाट हामीलाई मुक्त गर।

कितवासो यद्रिरिपुर्न दीवि यद्वा घा सत्यमुत यन्न विद्म।
सर्वा ता वि ष्य शिथिरेव देवाधा ते स्याम वरुण प्रियासः ॥८॥

हे वरुणदेव ! जुवा खेल्दा यदि भेल्ली गरेको भए वा जानीकन वा नजानेर अपराध गरेको भएदेखि हे वरुणदेव ! बन्धन खुकुल्याएभैँ ती अपराधबाट हामीलाई मुक्त गर र हामी तिम्रा प्रियपात्र हुन सकौं।

[सूक्त – ८६]

ऋषि – अत्रि भौम। देवता – इन्द्राग्नी। छन्द – अनुष्टुप् विराट्पूर्वा।

इन्द्राग्नी यमवथ उभा वाजेषु मर्त्यम्।
दृळहा चित्स प्र भेदति द्युम्ना वाणीरिव त्रितः ॥१॥

हे इन्द्राग्निदेवताहरू हो ! तिमीहरू दुवैले युद्धमा रक्षा गरेका मानिसले वेदका तीनै वाणीको मर्म बुझ्दछ र बलियो एवं दीप्तिमान् भएर शत्रुसेनालाई लछारपछार पार्दछ।

या पृतनासु दुष्टरा या वाजेषु श्रवाय्या।
या पञ्च चर्षणीरभीन्द्राग्नी ता हवामहे ॥२॥

युद्धमा जो अपराजेय छ, जो यज्ञमा अत्यन्त पूज्य छ, जो पाँचै वर्गमा स्तुत्य छ, तिनै इन्द्र र अग्निदेवतालाई हामी आह्वान गर्दछौं।

तयोरिदमवच्छवस्तिग्मा विद्युन्मघोनोः। प्रति द्रुणा गभस्त्योर्गवां वृत्रघ्न एषते।
इन्द्राग्नी देवतासँग शत्रुसंहारक बल छ। यी देवताहरू स्तुति प्राप्त गर्न र शत्रु संहार गर्नका लागि द्रुतगतिले रथमा जान्छन्। ऐश्वर्यवान् इन्द्र र अग्नि दुवैले आआफ्ना हातमा तिखो वज्र लिएका छन्।

ता वामेषे रथानामिन्द्राग्नी हवामहे। पती तरस्य राधसो विद्वांसा गिर्वणस्तमा।
वेगवान्, धनका अधिपति, सर्वज्ञाता, अतिशय पूजनीय हे इन्द्र र अग्निदेव ! हामी युद्धमा रथ प्रेरित गर्नका लागि तिमीहरूलाई आह्वान गर्दछौं।

ता वृधन्तावनु द्यून्मर्ताय देवावदभा। अर्हन्ता चित्पुरो दधेंऽशेव देवावर्वते ॥५॥
मानिसका लागि नै बलियो बनेका हे इन्द्रदेव र अग्निदेव ! तिमीहरू दुवै अहिंसनीय छौ। हामी अश्व प्राप्तिका लागि तिमीहरू दुवैलाई स्तुति गर्दछौं र सोमरसझैं अगाडि स्थापित गर्दछौं।

एवेन्द्राग्निभ्यामहावि हव्यं शूष्यं घृतं न पूतमद्रिभिः।
ता सूरिषु श्रवो बृहद्रयिं गृणत्सु दिधृतमिषं गृणत्सु दिधृतम् ॥६॥
हामीले बलकारक, घिउजस्तै तेजस्वी, ढुङ्गाले कुटेर निकालिएको, हविसहितको सोम इन्द्रदेव र अग्निदेवका लागि अर्पित गरेका छौं। ती देवताहरूले हामी स्तोतालाई मनग्गे धनयुक्त समृद्धि र धेरै अन्न प्रदान गरुन्।

[सूक्त - ८७]

ऋषि - एवयामरुत् आत्रेय। देवता - मरुत्गण। छन्द - अतिजगती।

प्र वो महे मतयो यन्तु विष्णवे मरुत्वते गिरिजा एवयामरुत्।
प्र शर्धाय प्रयज्यवे सुखादये तवसे भन्ददिष्टये धुनिव्रताय शवसे ॥१॥
एवया ऋषिले स्तुति गर्दा महान् इन्द्रदेवसँग मरुत्हरू र विष्णुदेव प्राप्त होऊन्। उत्तम आभूषणले अलङ्कृत, हितकारी र उन्नतिशील मरुत्हरूको बल याज्ञिकले पाऊन्।

प्र ये जाता महिना ये च नु स्वयं प्र विद्मना ब्रुवत एवयामरुत्।
क्रत्वा तद्वो मरुतो नाधृषे शवो दाना मह्ना तदेषमधृष्टासो नाद्रयः ॥२॥
मरुत्हरू आफ्ना महत्ताले प्रकट भए र आफ्ना विद्याले विख्यात भए। एवयामरुत् ऋषि मरुत्हरूको बयान गर्दछन्। हे मरुत्हरू हो ! तिमीहरूको बल दान आदि विशिष्ट कार्यले युक्त र महान् छ। तिमीहरू शत्रुबाट अपराजित र पर्वतजस्तै अटल छौ।

प्र ये दिवो बृहतः शृण्विरे गिरा सशुक्वानः सुभ्व एवयामरुत्।
न येषामिरी सधस्थ ईष्ट आँ अग्नयो न स्वविद्युतः प्र स्पन्द्रासो धुनीनाम् ॥३॥
अत्यन्त दीप्तिमान र प्रभासम्पन्न मरुत्हरू विस्तृत आकाशबाट गमन गर्दै प्रजाको आमन्त्रण सुनून्। एवयामरुत् ऋषि मरुत्हरूका विषयमा आफ्नै शब्दले बयान गर्दछन्। यिनलाई कसैले आफ्ना ठाउँबाट हल्लाउन सक्दैन। यिनीहरू अग्निजस्तै स्वयं प्रकाशमान हुनाले घोर शब्दवान् भएर भयङ्कर शत्रुलाई पनि थर्काइदिन्छन्।

स चक्रमे महतो निरुरुक्रमः समानस्मात्सदस एवयामरुत्।
यदायुक्त त्मना स्वादधि ष्णुभिर्विष्पर्धसो विमहसो जिगाति शेवृधो नृभिः ॥४॥
मरुत्हरूका स्वेच्छाले विचरणशील अश्व जब यिनीहरूका निवासनजिकै रथमा बाँधिएका वेला एवया मरुत् उनीहरूलाई पर्खन्छन्। मरुत्हरू महान् एकताका साथ आपसमा प्रतिस्पर्धा नगरीकन आआफ्ना एकै नासका निवासबाट बाहिर आउँछन्। तिनीहरू विलक्षण तेजयुक्त र सुखदायक छन्।

स्वनो न वोऽमवान्रेजयद्वृषा त्वेषो ययिस्तविष एवयामरुत्। येना सहन्त
ऋञ्जत स्वरोचिषः स्थारश्मानो हिरण्ययाः स्वायुधास इष्मिणः ॥५॥
हे मरुत्हरू हो ! तिमीहरूका बलसम्पन्न, जलवर्षक, तेजस्वी, गमनशील, प्रभावकारी शब्दले एवयामरुत् ऋषिलाई नतर्साओस्। त्यस शब्दले तिमीहरू शत्रु जितेर आफ्ना अधीनमा राख्दछौ। हे मरुत्हरू हो ! तिमीहरू स्वयं दीप्तिमान्, स्थिर रश्मि भएका, स्वर्ण अलङ्कारले सजिएका, गतिलो आयुध लिएका र अन्न प्रदाता हौ।

**अपारो वो महिमा वृद्धशवसस्त्वेषं शवोऽवत्वेवयामरुत्। स्थातारो हि**
**प्रसितौ संदृशि स्थन ते न उरुष्यता निदः शुशुक्वांसो नाग्नयः ॥६॥**

हे प्रवर्द्धमान शक्तिशाली मरुत्हरू हो ! निश्चय पनि तिमीहरूको महिमा अपार छ। तिमीहरूको तेजस्वी बल एवयामरुत् ऋषिले रक्षा गरुन्। शत्रुलाई आक्रमण गर्दा तिमीहरू स्थिर स्थानमा अविचलित देखिन्छौ। तिमीहरू अग्निदेवजस्तै तेजस्वी छौ। हामीलाई निन्दकहरूबाट जोगाओ।

**ते रुद्रासः सुमखा अग्नयो यथा तुविद्युम्ना अवन्त्वेवयामरुत्। दीर्घं पृथु**
**पप्रथे सद्म पार्थिवं येषामज्मेष्वा महः शर्धांस्यद्भुतैनसाम् ॥७॥**

हे उत्तम पूजनीय, अग्निसमानका अतिशय दीप्तिमान्, रुद्रपुत्र मरुत्हरू हो ! तिमीहरू एवयामरुत् ऋषिलाई संरक्षित गर। तिमीहरू आफ्नो अत्यन्त लामो र ठूलो निवासका कारण पनि प्रसिद्ध र पापरहित छौ। डुल्दाखेरि महान् तेजले प्रकाशित हुन्छौ।

**अद्वेषो नो मरुतो गातुमेतन श्रोता हवं जरितुरेवयामरुत्।**
**विष्णोर्महः समन्यवो युयोतन स्मद्रथ्योऽ न दंसनाप द्वेषांसि सनुतः ॥८॥**

हे द्वेषरहित मरुत्हरू हो ! काव्यस्तोत्र गाउँदा तिमीहरू यहाँ आओ। स्तुतिकर्ता एवया मरुत्ऋषिको स्तोत्र सुन। हे उत्सुक मन हुने मरुत्हरू हो ! तिमीहरू रथमा बाँधेको अश्वजस्तै व्यापक विष्णुदेवका शक्तिले योजित भएर हाम्रा स्तोत्रले प्रशंसित होओ। हे मरुत्हरू हो ! आफ्ना पराक्रमले हाम्रा गुप्त शत्रु पर भगाओ।

**गन्ता नो यज्ञं यज्ञियाः सुशमि श्रोता हवमरक्ष एवयामरुत्।**
**ज्येष्ठासो न पर्वतासो व्योमनि यूयं तस्य प्रचेतसः स्यात दुर्धर्तवो निदः ॥९॥**

हे यजनीय मरुत्हरू हो। हाम्रो यज्ञ सिद्ध गर्नका लागि यहाँ आओ। अलपत्र परेका एवयामरुत् ऋषिको प्रार्थना सुनेर उनलाई रक्षा गर। हाम्रो रक्षा गर्नमा तिमीहरू पर्वतझैं अडिग र महान् छौ। हे प्रकृष्ट ज्ञानसम्पन्न मरुत्हरू हो ! तिमीहरू हाम्रा निन्दकका माझमा अजेय बनेर उनीहरूको शासन गर।

**॥इति पञ्चमं मण्डलं समाप्तम्॥**
**पाँचौं मण्डल सकियो।**

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ षष्ठं मण्डलम्॥

॥छैटौं मण्डल॥

[सूक्त - १]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - अग्नि। **छन्द** - अनुष्टुप् शक्वरी।

**त्वं ह्यग्ने प्रथमो मनोतास्या धियो अभवो दस्म होता।**
**त्वं सीं वृषन्नकृणोर्दुष्टरीतु सहो विश्वस्मै सहसे सहध्यै ॥१॥**

हे अग्निदेव ! तिमी देवताहरूमा श्रेष्ठ हुनाले उनीहरूलाई आफूतिर आकर्षित गर्दछौ। यस संसारमा तिमी दर्शनका लागि योग्य छौ। होताहरूबाट गरिँदै भएको यस बुद्धिपूर्ण कार्यलाई सम्पन्न गर्नका लागि तिमी सहयोगी छौ। हे बलवान् देवता ! हामीलाई प्रचुर बल प्रदान गर, त्यसबाट हामी बलिया शत्रु जित्न सकौं।

**अधा होता न्यसीदो यजीयानिडस्पद इषयन्नीड्यः सन्।**
**तं त्वा नरः प्रथमं देवयन्तो महोराये चितयन्तो अनु ग्मन् ॥२॥**

हे अग्निदेव ! यजनका निम्ति योग्य तिमी हवि ग्रहण गर्ने हुँदा स्तुति गर्न योग्य छौ। हे प्रथम पूज्य देवता अग्निदेव ! दिव्य धनका इच्छाले यज्ञको अनुष्ठान गर्ने ऋत्विक्हरू तिमीलाई सबैभन्दा पहिले बोलाउँछन्। तिमी यज्ञवेदीमा प्रतिष्ठित होऊ।

**वृतेव यन्तं बहुभिर्वसव्यै३ स्त्वे रयिं जागृवांसो अनु ग्मन्।**
**रुशन्तमग्निं दर्शतं बृहन्तं वपावन्तं विश्वहा दीदिवांसम् ॥३॥**

तेजस्वी, दर्शनीय हे अग्निदेव ! तिमी सधैं ज्योतिवान् भएर आहुति ग्रहण गर्दछौ। तिमी वसुहरूका मार्गबाट गमन गर्दछौ। ऐश्वर्यका इच्छुक साधक तिम्रो अनुसरण गर्दछन्।

**पदं देवस्य नमसा व्यन्तः श्रवस्यवः श्रव आपन्नमृक्तम्।**
**नामानि चिद्दधिरे यज्ञियानि भद्रायां ते रणयन्त सन्दृष्टौ ॥४॥**

यश र वैभव प्राप्त गर्ने कामना भएका याजकहरू स्तोत्रले प्रसन्न गर्दै यज्ञशालामा अग्निदेवलाई आह्वान गर्दछन्। हे अग्निदेव उनीहरू तिम्रो दर्शन पाएर, खुसी हुँदै स्तोत्र उच्चारण गर्दछन् र मन लागेको पदार्थ प्राप्त गर्दछन्।

**त्वां वर्धन्ति क्षितयः पृथिव्यां त्वां राय उभयासो जनानाम्।**
**त्वं त्राता तरणे चेत्यो भूः पिता माता सदमिन्मानुषाणाम् ॥५॥**

हे अग्निदेव ! यज्ञवेदीमा प्रतिष्ठित यजमानले तिमीलाई उचित रूपले प्रज्वलित गर्छन्। अध्वर्युहरू दुवै खालको सम्पदा प्राप्त गर्ने विचारले तिमीलाई ठूलो रूपमा प्रज्वलित गर्दछन्। हे दुःखनाशक अग्निदेव ! तिमी स्तुतिले प्रसन्न भएर मातापिताको जस्तै कृपा र संरक्षण प्रदान गर।

**सपर्येण्यः स प्रियो विक्ष्व१ग्निर्होता मन्द्रो नि षसादा यजीयान्।**
**तं त्वा वयं दम आ दीदिवांसमुप ज्ञुबाधो नमसा सदेम ॥६॥**

प्रजाको हितका लागि यज्ञकर्म सम्पन्न गर्ने, दान दिनमा समर्थ पूज्य, यजनीय अग्निलाई हामी वेदीमा स्थापित गर्दछौं। हे अग्निदेव ! तिमी घर उज्यालो पार्दछौ। हामी स्तोत्रले तिम्रो स्तुति र वन्दना गर्दछौं।

**तं त्वा वयं सुध्यो३ नव्यमग्ने सुम्नायव ईमहे देवयन्तः।**
**त्वं विशो अनयो दीद्यानो दिवो अग्ने बृहता रोचनेन ॥७॥**

हे अग्निदेव ! हामी सद्बुद्धिसम्पन्न सुखको कामनाले तिम्रो स्तुति गर्दछौं। तिमी तेज धारण गर्दछौ। तिमी सूर्यजस्तै देदीप्यमान भएर हामीलाई दिव्यलोकसम्म लैजाऊ।

विशां कविं विश्पतिं शश्वतीनां नितोशनं वृषभं चर्षणीनाम्।
प्रेतीषणिमिषयन्तं पावकं राजन्तमग्निं यजतं रयीणाम् ॥८॥

प्रजापालक, ज्ञानी, शत्रु विनाश गर्ने, परम बलशाली, कामना पूर्ति गर्ने, अन्न दान गर्ने र प्रजाका नजिक जाने हे तेजस्वी अग्निदेव ! हामी तिम्रो स्तुति गर्दछौं। हामीलाई तिमी अन्न, धन र तेज प्रदान गर।

सो अग्न ईजे शशमे च मर्तो यस्त आनट् समिधा हव्यदातिम्।
य आहुतिं परि वेदा नमोभिर्विश्वेत्स वामा दधते त्वोतः ॥९॥

हे अग्निदेव ! याजकहरू स्तुति गर्दै तिम्रा निम्ति हवि प्रदान गर्दै यज्ञ गर्दछन्। तिम्रा कृपाले उनीहरू मन लागेका धन प्राप्त गरुन्।

अस्मा उ ते महि महे विधेम नमोभिरग्ने समिधोत हव्यैः।
वेदी सूनो सहसो गीर्भिरुक्थैरा ते भद्रायां सुमतौ यतेम ॥१०॥

हे अग्निदेव ! तिमी महान् छौ। तिमीलाई हामी नमस्कार गर्दछौं, तिम्रो स्तुति गर्दछौं र तिम्रा लागि हवि प्रदान गर्दछौं। यज्ञस्थलमा वाणी र स्तोत्रले तिम्रो पूजन गर्दछौं। तिम्रा कृपाले हामी सुमति प्राप्त गरौं, त्यसबाट हाम्रो प्रगति होस्।

आ यस्ततन्थ रोदसी वि भासा श्रवोभिश्च श्रवस्य१ स्तरुत्रः।
बृहद्भिर्वाजैः स्थविरेभिरस्मे रेवद्भिरग्ने वितरं वि भाहि ॥११॥

हे अग्निदेव ! तिमीले आफ्नो दीप्ति द्यावापृथिवीमा विशेष रूपले विस्तृत गरेका छौ। हामी स्तोत्रले स्तुति गर्दछौं, हामीलाई तिमी तार्दछौ। तिमी नजिकैको वेदीमा प्रदीप्त भएर हाम्रा लागि अन्न र धन प्रदान गर।

नृवद्वसो सदमिद्धेह्यस्मे भूरि तोकाय तनयाय पश्वः।
पूर्वीरिषो बृहतीरारेअघा अस्मे भद्रा सौश्रवसानि सन्तु ॥१२॥

हे अग्निदेव ! पुत्र, पौत्र र आफन्तहरूले हाम्रो घर भरियोस्। तिमी ऐश्वर्यवान्‌बाट प्राप्त ऐश्वर्यले हाम्रा ती पुत्र, पौत्र एवं आफन्तहरूको पोषण र कल्याण गर। हामीलाई शक्ति प्रदान गर। त्यस शक्तिले हामी निष्पाप रहँदै कल्याणकारी र यशस्वी बनौं।

पुरूण्यग्ने पुरुधा त्वाया वसूनि राजन्वसुता ते अश्याम्।
पुरूणि हि त्वे पुरुवार सन्त्यग्ने वसु विधते राजनि त्वे ॥१३॥

हे ज्योतिस्वरूप अग्निदेव ! हामीलाई तिमी अश्व एवं गाईसहितको धन प्रदान गर। हे अग्निदेव ! तिमी ऐश्वर्यवान, रमणीय र वरणीय छौ। तिमी प्रचुर धनका स्वामी हौ।

## [सूक्त – २]

ऋषि – भरद्वाज बार्हस्पत्य। देवता – अग्नि। छन्द – अनुष्टुप् शक्वरी।

त्वं हि क्षैतवद्यशोऽग्ने मित्रो न पत्यसे।
त्वं विचर्षणे श्रवो वसो पुष्टिं न पुष्यसि ॥१॥

हे अग्निदेव ! तिमी सबैका मित्र हौ। अन्न र तेजका अधिपति हौ। हे अग्निदेव ! तिमी सर्वद्रष्टा हौ, पोषक पदार्थले हामीलाई पुष्ट बनाऊ।

त्वां हि ष्मा चर्षणयो यज्ञेभिर्गीर्भिरीळते।
त्वां वाजी यात्यवृको रजस्तूर्विश्वचर्षणिः ॥२॥

हे अग्निदेव ! हव्य र स्तोत्रले याजकहरू तिम्रो पूजा गर्दछन्। कुटिलतारहित, सबैलाई तार्ने, विश्वद्रष्टाले तिमीलाई प्राप्त गर्दछन्।

सजोषस्त्वा दिवो नरो यज्ञस्य केतुमिन्धते।
यद्ध स्य मानुषो जनः सुम्नायुर्जुह्वे अध्वरे ॥३॥

हे अग्निदेव ! तिमी यज्ञका शिरोमणि ध्वजजस्तै हौ। मनुका पुत्रहरू सुखसमृद्धिका इच्छाले, आपस द्वेष अलिकति पनि नराखीकन तिमीलाई यज्ञशालामा आह्वान गर्दछन्। तिमी आफ्ना दिव्य तेजद्वारा प्रदीप्त हुने कृपा गर।

ऋधद्यस्ते सुदानवे धिया मर्तः शशमते।
ऊती ष बृहतो दिवो द्विषो अंहो न तरति॥४॥

उदार मन भएका हे अग्निदेव ! जुन मानिसले बुद्धिपूर्वक तिम्रो स्तुति गर्दछन्, तिनीहरू सम्पन्न हुन्छन्। हे तेजस्वी अग्निदेव ! तिम्रो संरक्षण र साधन प्राप्त गरेर साधकहरू पापको रूपमा रहेका द्वेष गर्नेहरूलाई नष्ट गरेर उन्नतिशील हुन्छन्।

समिधा यस्त आहुतिं निशितिं मर्त्यो नशत्।
वयावन्तं स पुष्यति क्षयमग्ने शतायुषम्॥५॥

हे अग्निदेव ! जुन साधक समिधासहित पवित्र आहुति तिमीलाई अर्पित गर्दछन्, उनीहरू असल सन्तानले युक्त भरिपूर्ण परिवारभित्र आनन्दपूर्वक सय वर्ष बाँच्छन्।

त्वेषस्ते धूम ऋण्वति दिवि षञ्छुक्र आततः।
सूरो न हि द्युता त्वं कृपा पावक रोचसे॥६॥

प्रदीप्त भइसकेपछि अग्निको सेतो धुवाँ अन्तरिक्षमा फैलिएको देखिन्छ। हे पावन अग्निदेव ! स्तुतिका प्रभावले तिमी प्रकाशित हुन्छौ।

अधा हि विक्ष्वीड्योऽसि प्रियो नो अतिथिः।
रण्वः पुरीव जूर्यः सूनुर्न त्रययाय्यः॥७॥

हे अग्निदेव ! तिमी स्तुत्य छौ। तिमी अतिथिजस्तै परम प्रिय छौ। नगरवासी, हितैषि, उपदेशक वृद्धको जस्तै आश्रयका निम्ति योग्य र पुत्रजस्तो पाल्न योग्य छौ।

क्रत्वा हि द्रोणे अज्यसेऽग्ने वाजी न कृत्व्यः।
परिज्मेव स्वधा गयोऽत्यो न ह्वार्यः शिशुः॥८॥

हे अग्निदेव ! तिमीलाई हामी अरणीमन्थन क्रियाबाट प्राप्त गर्दछौं। तिमी वायुजस्तै सर्वत्र गमनशील छौ। तिमी अश्वको रूप हुनाले लक्ष्यसम्म हवि पुर्याउँछौ। बालको जस्तो पवित्र स्वभाव हुने हे अग्निदेव ! हामीलाई तिमी अन्न र निवास प्रदान गर।

त्वं त्या चिदच्युताग्ने पशुर्न यवसे।
धामा ह यत्ते अजर वना वृश्चन्ति शिक्वसः॥९॥

हे अग्निदेव ! अश्व आदि पशुले घाँस खाएझैं तिमी कठिन काठ आफूमा समेट्दछौ। हे तेजस्वी अग्निदेव ! तिम्रा तेजस्वी शिखाले वन भस्म गर्न गर्दछ।

वेषि ह्यध्वरीयतामग्ने होता दमे विशाम्।
समृधो विश्पते कृणु जुषस्व हव्यमङ्गिरः॥१०॥

हे अग्निदेव ! यज्ञ गर्न रुचाउने याजकका घरमा होताका रूपमा तिमी जान्छौ। हे अग्निदेव ! हाम्रो आहुति ग्रहण गर्ने पालक भएर हामीलाई समृद्धिशाली बनाऊ।

अच्छा नो मित्रमहो देव देवानग्ने वोचः सुमतिं रोदस्योः। वीहि स्वस्तिं
सुक्षितिं दिवो नॄन्द्विषो अंहांसि दुरिता तरेम ता तरेम तवावसा तरेम॥११॥

हे दिव्य गुणसम्पन्न अग्निदेव ! शान्त र विकराल दुवै खालको गुण भएका तिमी द्यावापृथिवीमा व्याप्त छौ। तिमी हाम्रो वाणी र आहुति देवताकहाँ पुर्याइदेऊ। हामी स्तुतिकर्तालाई सुव्यवस्थित आवास र सौभाग्य प्रदान गर्दै शत्रुको सङ्कट र पापबाट जोगाऊ। हे अग्निदेव ! तिमीबाट सुरक्षित भएर हामी निर्विघ्न जीवन निर्वाह गरौं।

[सूक्त - ३]

ऋषि - भरद्वाज बार्हस्पत्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

अग्ने स क्षेषदृतपा ऋतेजा उरु ज्योतिर्नशते देवयुष्टे।
यं त्वं मित्रेण वरुणः सजोषा देव पासि त्यजसा मर्तमंहः॥१॥

हे अग्निदेव ! यज्ञबाट उत्पन्न र यज्ञपालक याजकहरूलाई दीर्घायु प्रदान गर। तिमी मित्र र वरुणजस्तै प्रीतिपूर्ण व्यवहार गर्दछौ। देवत्व प्राप्तिको कामना गर्ने याजकलाई तिमी आफ्ना तेजले पापबाट जोगाउँछौ र उनीहरूलाई सबै किसिमले रक्षा गर्दछौ।

ईजे यज्ञेभिः शशमे शमीभिर्ऋधद्वारायाग्नये ददाश।
एवा चन तं यशसामजुष्टिर्नांहो मर्तं नशते न प्रदृप्तिः ॥२॥

उत्तम वैभवशाली अग्निदेवका लागि आहुति प्रदान गर्ने याजकलाई पुत्र आदि धन प्राप्त हुन्छ। उनीहरू पाप र अभिमानरहित हुनाले उत्तम जीवन निर्वाह गर्दछन्।

सूरो न यस्य दृशतिररेपा भीमा यदेति शुचतस्त आ धीः।
हेषस्वतः शुरुधो नायमक्तोः कुत्रा चिद्रण्वो वसतिर्वनेजाः ॥३॥

सूर्यदेवजस्तै अग्निका दर्शनले दोषमुक्त गराउँछ। उनको प्रज्वलित मेधाशक्ति सर्वत्र भयानक भएर फैलिन्छ। रातको शोकरूपी अन्धकार निवारण गर्ने र गम्भीर शब्द गर्दै सबैलाई आवास प्रदान गर्ने अग्निदेव जतासुकै वनमा शोभायमान हुन्छन्।

तिग्मं चिदेम महि वर्पो अस्य भसदश्वो न यमसान आसा।
विजेहमानः परशुर्न जिह्वां द्रविर्न द्रावयति दारु धक्षत् ॥४॥

अग्निदेवको काम गर्ने मार्ग तीक्ष्ण र स्वरूप तेजस्वी छ। जिब्रोरूपी ज्वाला बन्चरोभैँ कठोर काठमा चलाउँछन्। कर्मीहरूले भैँ धातुलाई गाल्दछन्।

स इदस्तेव प्रति धादसिष्यञ्छिशीत तेजोऽयसो न धाराम्।
चित्रध्रजतिररतिर्यो अक्तोर्वेर्न द्रुषद्वा रघुपत्मजंहाः ॥५॥

बाण चलाउनेले प्रतिघात गरेभैँ अग्निदेवका फर्सोजस्ता तीखा ज्वालाले लक्ष्य वेध गर्दछ। तीव्रगामी पक्षी भटपट रुखका हाँगामा बसेभैँ शीघ्रतापूर्वक काठका समिधामा बसेर डढाउँछन् र प्रदीप्त भएर रातको अन्धकार नाश गर्दछन्।

स ईं रेभो न प्रति वस्त उस्राः शोचिषा रारपीति मित्रमहाः।
नक्तं य ईमरुषो यो दिवा नॄनमर्त्यो अरुषो यो दिवा नॄन् ॥६॥

स्तुति योग्य अग्निदेव सूर्यदेवकै जस्तो आफ्ना ज्वालाको दीप्ति फिँजाउँछन्। मित्रभैँ प्रकाश फैलाउँदै शब्द पनि गर्दछन्। अमर अग्निदेव प्रदीप्त ज्वालासँगै प्रज्वलित रहून्।

दिवो न यस्य विधतो नवीनोद्वृषा रुक्ष ओषधीषु नूनोत्।
घृणा न यो ध्रजसा पत्मना यन्ना रोदसी वसुना दं सुपत्नी ॥७॥

सूर्यजस्ता तेजस्वी, बलवान् अग्निदेव प्रदीप्त भएर औषधियुक्त काठ आदि जलाउँदा विशेष किसिमको शब्द निकाल्दछन्। यिनको दन्केको ज्वाला वरपर छरिँदै माथि जान्छ। उनले हाम्रा शत्रु पराजित गर्दै द्यावापृथिवीलाई धनले समृद्ध गराऊन्।

धायोभिर्वा यो युज्येभिरर्कैर्विद्युन्न दविद्योत्स्वेभिः शुष्मैः।
शर्धो वा यो मरुतां ततक्ष ऋभुर्न त्वेषो रभसानो अद्यौत् ॥८॥

हविवाहक अग्निदेव रथमा जडिएका अश्वजस्तै कान्तियुक्त छन्। उनी तेजले विद्युत्भैँ देदीप्यमान र मरुत्हरूभन्दा बलिया छन्। सूर्यदेवजस्तै कान्तियुक्त अग्निदेव वेगका साथ प्रदीप्त हुन्छन्।

[सूक्त – ४]

ऋषि – भरद्वाज बार्हस्पत्य। देवता – अग्नि। छन्द – त्रिष्टुप्।

यथा होतर्मनुषो देवताता यज्ञेभिः सूनो सहसो यजासि।
एवा नो अद्य समना समानानुशन्नग्न उशतो यक्षि देवान् ॥१॥

हे अग्निदेव ! तिमी देवताहरूलाई बोलाउन सक्ने बलका पुत्र हौ। यज्ञमा आफूजस्तै बलशाली इन्द्र आदि देवताहरूलाई विज्ञजनका यज्ञमा भैँ हविद्वारा यजन गर।

स नो विभावा चक्षणिर्न वस्तोरग्निर्वन्दारु वेद्यश्चनो धात्।
विश्वायुर्यो अमृतो मर्त्येषूषर्भुद्भूदतिथिर्जातवेदाः ॥२॥

अग्निदेव हामीलाई यशस्वी र धनसम्पन्न बनाऊन्। उनी सूर्यजस्तै तेजस्वी, प्रकाशक, अमर, बुद्धिले जान्न योग्य छन् र अतिथिका रूपमा उषा कालमा प्रदीप्त हुन्छन्।

द्यावो न यस्य पनयन्त्यभ्वं भासांसि वस्ते सूर्यो न शुक्रः।
वि य इनोत्यजरः पावकोऽश्नस्य चिच्छिश्नथत्पूर्व्याणि ॥३॥

अग्निदेव सूर्यदेवजस्तै उज्यालो प्रकाश फैलाउने, पवित्र गराउने, अजर प्रकाशले सबै पदार्थ देख्ने, शत्रु पराजित र शत्रुको सहरलाई ध्वस्त गर्ने हुन्। उनै अग्निदेवका महान् कार्यको यशोगान स्तोताले गर्दछन्।

वद्मा हि सूनो अस्यद्मसद्वा चक्रे अग्निर्जनुषाज्मान्नम्।
स त्वं न ऊर्जसन ऊर्जं धा राजेव जेरवृके क्षेष्यन्तः ॥४॥
सर्वप्रेरक हे अग्निदेव ! तिमी स्तुति योग्य छौ। याजकले दिएका आहुतिले प्रसन्न भएर उनीहरूलाई तिमी अन्न र आवास प्रदान गर्छौं। हे अन्नदाता अग्निदेव ! यज्ञवेदीमा प्रतिष्ठित होऊ र शत्रु संहार गर्दै हामीलाई अन्न प्रदान गर।

नितिक्ति यो वारणमन्नमत्ति वायुर्न राष्ट्र्यत्येत्यक्तून्।
तुर्याम यस्त आदिशामरातीरत्यो न ह्रुतः पततः परिह्रुत् ॥५॥
अग्निदेव आफ्नो अन्धकारनाशक तेजस्वी प्रकाश अझै प्रखर गराउँछन्। उनी रातलाई समेत जित्दछन् र हवि ग्रहण गर्दछन्। प्राणरूप भएर वायुदेवले सबैमाथि शासन गरेझैं अग्निदेवले पनि सबैमाथि शासन गरुन्। यज्ञीय नियम नमान्नेमाथि विजय प्राप्त गरुन्। हे अग्निदे व! तिमी तीव्रगामी अश्वजस्तो भएर आक्रमण गर्नेहरूलाई संहार गर।

आ सूर्यो न भानुमद्भिरर्कैरग्ने ततन्थ रोदसी वि भासा।
चित्रो नयत्परि तमांस्यक्तः शोचिषा पत्मन्नौशिजो न दीयन् ॥६॥
हे अग्निदेव ! द्यावापृथिवीमा सूर्यदेव तेजस्वी किरणले व्याप्त भएझैं तिमी आफ्नो कान्ति व्याप्त गर्छौं। आकाश मार्गगामी सूर्यदेवझैं तेजस्वी र अद्‌भुत अग्निदेव पनि अन्धकार हटाउँछन्।

त्वां हि मन्द्रतममर्कशोकैर्ववृमहे महि नः श्रोष्यग्ने।
इन्द्रं न त्वा शवसा देवता वायुं पृणन्ति राधसा नृतमाः ॥७॥
हे आनन्ददायक, पूजनीय अग्निदेव ! हामी तिम्रो स्तुति गर्दछौं। हाम्रो उत्तम स्तोत्र सुन। नेतृत्व गर्नमा समर्थ तिमीलाई याजकहरू हव्यद्वारा वायु र इन्द्रदेवलाई जस्तै सन्तुष्ट गराउँछन्।

नू नो अग्नेऽवृकेभिः स्वस्ति वेषि रायः पथिभिः पर्ष्यंहः।
ता सूरिभ्यो गृणते रासि सुम्नं मदेम शतहिमाः सुवीराः ॥८॥
हे अग्निदेव ! तिम्रा कृपाले अहिंसापूर्ण उत्तम विधिबाट सुख र धनसम्पदा प्राप्त होस्। हामीलाई पाप कर्मबाट जोगाऊ। तिमी विद्वान्‌लाई जुन सुख दिन्छौ, त्यही सुख हामी स्तोतालाई पनि देऊ। हामी सय वर्षसम्म सुसन्ततिसहित आनन्दपूर्वक रहन सकौं।

[सूक्त - ५]

**ऋषि** - भरद्वाज बार्हस्पत्य। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

हुवे वः सूनुं सहसो युवानमद्रोघवाचं मतिभिर्यविष्ठम्।
य इन्वति द्रविणानि प्रचेता विश्ववाराणि पुरुवारो अध्रुक् ॥१॥
हे अग्निदेव ! तिमी बलका पुत्र, द्रोहशून्य, चिरयुवा, मेधावी र स्तुति योग्य छौ। यस्ता गुणले सम्पन्न अग्निदेवलाई स्तोत्रले हामी आह्वान गर्दछौं। अग्निदेवले मनुका स्तुति गर्ने पुत्रलाई मन परेको धन र यश प्रदान गर्दछन्।

त्वे वसूनि पुर्वणीक होतर्दोषा वस्तोरेरिरे यज्ञियासः।
क्षामेव विश्वा भुवनानि यस्मिन्त्सं सौभगानि दधिरे पावके ॥२॥
हे अग्निदेव ! तिमी धेरै ज्वालका ज्वाला भएका र देवताहरूलाई बोलाउन समर्थ छौ। यज्ञकर्ता यजमानहरू रातदिन तिम्रा लागि नै हविष्यान्न प्रदान गर्दछन्। जसरी पृथ्वीमा सबै प्राणी रहेका छन्, उसै गरी अग्निदेव समस्त धनऐश्वर्य धारण गर्दछन्।

त्वं विक्षु प्रदिवः सीद आसु क्रत्वा रथीरभवो वार्याणाम्।
अत इनोषि विधते चिकित्वो व्यानुषग्जातवेदो वसूनि ॥३॥
हे अग्निदेव ! तिमी आफ्ना सामर्थ्यले उच्च इच्छा पूरा गर्दछौ। तिमी सम्पत्तिवान्‌मध्ये प्रमुख हौ। हे ज्ञानरूपी देवता ! तिमी आफ्ना याजकलाई सधैं ऐश्वर्य प्रदान गर।

यो नः सनुत्यो अभिदासदग्ने यो अन्तो मित्रमहो वनुष्यात्।
तमजरेभिर्वृषभिस्तव स्वैस्तपा तपिष्ठ तपसा तपस्वान् ॥४॥
हे अग्निदेव ! जुन शत्रुहरू लुकेर वा हामीभित्र पसेर हाम्रो हानी गरिरहेका हुन्छन्, तिमी ती दुवै किसिमका शत्रुलाई संहार गर्दछौ। तिम्रो तेज चिरयुवा र पर्जन्यको कारण हो।

**यस्ते यज्ञेन समिधा य उक्थैरर्केभिः सूनो सहसो ददाशत्।**
**स मर्त्येष्वमृत प्रचेता राया द्युम्नेन श्रवसा वि भाति ॥५॥**

हे अग्निदेव ! याजकहरू हव्य पदार्थले यज्ञ गरेर तिम्रो सेवा गर्दै स्तोत्रले स्तुति गर्छन्। ती यजमान उत्तम ज्ञान, अन्न र धन प्राप्त गर्दै मनुका सन्तानमा बढी सुशोभित हुन्छन्।

**स तत्कृधीषितस्तूयमग्ने स्पृधो बाधस्व सहसा सहस्वान्।**
**यच्छस्यसे द्युभिरक्तो वचोभिस्तज्जुषस्व जरितुर्घोषि मन्म ॥६॥**

हे अग्निदेव ! तिमी प्रकाशमान तेजले युक्त एवं शक्तिशाली छौ। आफ्ना शक्तिले हाम्रा शत्रु नाश गर। श्रेष्ठ वाणीले गरेको स्तुति स्वीकार गर। जुन कार्यमा तिमी नियुक्त गरिएका छौ, कृपा गरेर त्यो पूरा गर।

**अश्याम तं काममग्ने तवोती अश्याम रयिं रयिवः सुवीरम्।**
**अश्याम वाजमभि वाजयन्तोऽश्याम द्युम्नमजराजरं ते ॥७॥**

हे अग्निदेव ! तिम्रा कृपाले हाम्रो कामना पूरा होस्। ऐश्वर्यका स्वामी हे अग्निदेव ! हामी सुसन्तति युक्त एवं ऐश्वर्यवान् होऔं। हे अन्नदाता ! हामीलाई अन्न प्रदान गर। हे अग्निदेव ! तिमी अजर छौ, आफ्नो तेजस्वी अमर यशले हामीलाई यशस्वी बनाऊ।

[सूक्त - ६]

**ऋषि** - भरद्वाज बार्हस्पत्य। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

**प्र नव्यसा सहसः सूनुमच्छा यज्ञेन गातुमव इच्छमानः।**
**वृश्चद्वनं कृष्णयामं रुशन्तं वीती होतारं दिव्यं जिगाति ॥१॥**

सुरक्षाको कामना गर्ने याजकहरू यज्ञीय जीवन निर्वाह गर्दै स्तुतिका लागि योग्य एवं बलका पुत्र अग्निदेवसित जान्छन्। अग्निदेव कालो मार्ग लिएका, तेजस्वी, वन भस्म गराउन सक्ने र दिव्य होता हुन्।

**स श्वितानस्तन्यतू रोचनस्था अजरेभिर्नानदद्भिर्यविष्ठः।**
**यः पावकः पुरुतमः पुरूणि पृथून्यग्निरनुयाति भर्वन् ॥२॥**

अग्निदेव सेतो वर्णका, अनेकौं किरण भएका, तेजस्वी, प्रकाश फिंजाउने र चिरयुवा हुन्। अत्यन्त शब्द गर्ने पवित्र अग्निदेव ठूला समिधा भक्षण गर्दै गमन गर्दछन्।

**वि ते विष्वग्वातजूतासो अग्ने भामासः शुचे शुचयश्चरन्ति।**
**तुविम्रक्षासो दिव्या नवग्वा वना वनन्ति धृषता रुजन्तः ॥३॥**

हे अग्निदेव ! तिम्रो ज्वाला वायुभन्दा बढी प्रखर भएर काठ जलाउँछ। यसले वन भस्म गर्न पनि सक्छ। प्रज्वलित अग्निको शिखा सर्वत्र व्याप्त हुन्छ।

**ये ते शुक्रासः शुचयः शुचिष्मः क्षां वपन्ति विषितासो अश्वाः।**
**अध भ्रमस्त उर्विया वि भाति यातयमानो अधि सानु पृश्नेः ॥४॥**

हे अग्निदेव ! तिम्रो ज्वाला खुला छोडिएको अश्वझैं सर्वत्र गमन गर्दै पृथ्वीमा क्रीडा गर्दछ। त्यसले वन जलाउन सक्छ।

**अध जिह्वा पापतीति प्र वृष्णो गोषुयुधो नाशनिः सृजाना।**
**शूरस्येव प्रसितिः क्षातिरग्नेर्दुर्वर्तुर्भीमो दयते वनानि ॥५॥**

बलशाली अग्निदेवको दन्किरहेको लप्का इन्द्रदेवले बारम्बार वज्र उचालिरहेको जस्तो देखिन्छ। शूरवीरले फ्याँकेको पाशझैं नरोकिने अग्निका ज्वालाले वन डढाउँछ।

**आ भानुना पार्थिवानि ज्रयांसि महस्तोदस्य धृषता ततन्थ।**
**स बाधस्वाप भया सहोभिः स्पृधो वनुष्यन्वनुषो नि जूर्व ॥६॥**

हे अग्निदेव ! तिमी आफ्ना प्रकाशलाई प्रेरित गर्ने किरणले सम्पूर्ण पृथ्वी ढाकिदेऊ र हामीसित द्वेष गर्ने शत्रुलाई आफ्ना शक्तिले नष्ट गर।

**स चित्र चित्रं चितयन्तमस्मे चित्रक्षत्र चित्रतमं वयोधाम्।**
**चन्द्रं रयिं पुरुवीरं बृहन्तं चन्द्र चन्द्राभिर्गृणते युवस्व ॥७॥**

हे अग्निदेव ! हामी स्तोत्रले तिम्रो स्तुति गर्दछौं। तिमी अद्भुत रूप भएका, यश प्रदान गर्ने र अन्नदाता हौ। हामीलाई तिमी पुत्रपौत्रादि र अन्नऐश्वर्य प्रदान गर।

[सूक्त - ७]

ऋषि – भरद्वाज बार्हस्पत्य। देवता – वैश्वानर अग्नि। छन्द – त्रिष्टुप् जगती।

मूर्धानं दिवो अरतिं पृथिव्या वैश्वानरमृत आ जातमग्निम्।
कविं सम्राजमतिथिं जनानामासन्ना पात्रं जनयन्त देवाः ॥१॥

द्युलोकको सबैभन्दा माथि बस्ने, भूलोकका स्वामी, वैश्वानर अग्निदेव सबै प्राणीभित्र छन्। ज्ञानी अतिथिजस्ता र पूज्य देवताहरूका मुखरूपी अग्निदेवलाई देवताहरूले नै प्रकट गरेका हुन्।

नाभिं यज्ञानां सदनं रयीणां महामहावमभि सं नवन्त।
वैश्वानरं रथ्यमध्वराणां यज्ञस्य केतुं जनयन्त देवाः ॥२॥

यज्ञका केन्द्रस्थल, धनका भण्डार, महान् आहुति युक्त, समस्त विश्वका नेता, अहिंसक, यज्ञका सञ्चालक र यज्ञको पताकारूपी अग्निलाई याज्ञिकहरूले मन्थन गरेर उत्पन्न गरे। हामी उनको वन्दना गर्दछौं।

त्वद्विप्रो जायते वाज्यग्ने त्वद्वीरासो अभिमातिषाहः।
वैश्वानर त्वमस्मासु धेहि वसूनि राजन्त्स्पृहयाय्याणि ॥३॥

हे तेजस्वी वैश्वानर अग्निदेव ! हामीलाई तिमी मनग्गे धन देऊ। हे देव ! हविष्यान्नले यजन गर्नेहरूलाई तिमी दिव्य ज्ञान दिन्छौ। योद्धाहरू तिम्रो कृपाबाट पाएका सामर्थ्यले नै शत्रुलाई परास्त गराउँछन्।

त्वां विश्वे अमृत जायमानं शिशुं न देवा अभि सं नवन्ते।
तव क्रतुभिरमृतत्वमायन्वैश्वानर यत्पित्रोरदीदेः ॥४॥

हे अमृतस्वरूप अग्निदेव ! तिमी उत्पन्न हुनेबित्तिकै देवता र मानिसहरू तिमीलाई बालकजस्तै आदरणीय मान्दछन्। हे विश्वका नायक ! द्युलोक र भूलोकका माझमा तिमी दीप्तिमान् भएर यज्ञ सम्पादन गर्दा त्यस यज्ञबाट यजमानहरूले देवत्व प्राप्त गरे।

वैश्वानर तव तानि व्रतानि महान्यग्ने नकिरा दधर्ष।
यज्जायमानः पित्रोरुपस्थेऽविन्दः केतुं वयुनेष्वह्नाम् ॥५॥

हे वैश्वानर अग्निदेव ! तिमीले आफ्ना उत्पादकहरूका माझबाट जन्म लिएपछि यज्ञ कर्ममा प्रतिष्ठित भएर दिनको केतुस्वरूप सूर्य र ज्वाला प्राप्त गर्‍यौ। तिम्रा यस महान कर्ममा कसैले बाधा हाल्न सक्दैन।

वैश्वानरस्य विमितानि चक्षसा सानूनि दिवो अमृतस्य केतुना।
तस्येदु विश्वा भुवनाधि मूर्धनि वया इव रुरुहुः सप्त विस्रुहः ॥६॥

सर्वहितकारी, प्रकाशक, वैश्वानरका अमृतस्वरूप केतुबाट द्युलोकको शिखर प्रकाशित हुन्छ। त्यसका शिरोभागबाट शाखाप्रशाखाझैं भएर सात वटा धारा प्रवाहित हुन्छन्।

वि यो रजांस्यमिमीत सुक्रतुर्वैश्वानरो वि दिवो रोचना कविः।
परि यो विश्वा भुवनानि पप्रथेऽदब्धो गोपा अमृतस्य रक्षिता ॥७॥

असल कर्म सम्पन्न गर्ने र गराउने अग्निदेव समस्त भुवनका निर्माता हुन्। द्युलोकभन्दा परका नक्षत्रलाई पनि उनले प्रकाशित गरेका छन्। समस्त भुवनलाई विस्तार गर्ने, अजेय र अमृतका संरक्षक यिनै अग्निदेव हुन्।

[सूक्त - ८]

ऋषि – भरद्वाज बार्हस्पत्य। देवता – वैश्वानर अग्नि। छन्द – त्रिष्टुप् जगती।

पृक्षस्य वृष्णो अरुषस्य नू सहः प्र नु वोचं विदथा जातवेदसः।
वैश्वानराय मतिर्नव्यसी शुचिः सोमइव पवते चारुरग्नये ॥१॥

दीप्तिमान्, तेजस्वी, सर्वव्यापी अग्निदेवलाई हामी स्तुति गर्दछौं। यज्ञ कार्यमा अग्निका लागि उच्चारण गरिने पवित्र र सुन्दर स्तोत्र सबै होताका लागि हितकारी छन्। त्यस्तै स्तोत्र यज्ञनजिक सोम पुगेझैं अग्निदेवका समीपमा पुग्दछन्।

स जायमानः परमे व्योमनि व्रतान्यग्निर्व्रतपा अरक्षत।
व्य१न्तरिक्षममिमीत सुक्रतुर्वैश्वानरो महिना नाकमस्पृशत् ॥२॥

सर्वव्यापी, जगत्का हितकारी, व्रतपालक अग्निदेव दिव्य आकाशमा प्रकाशित भएर दैवी र

लौकिक दुवै प्रकारका सत्कर्मका रक्षक र पालक हुन्छन्। अन्तरिक्षका पदार्थका निर्माता यिनै अग्निदेव हुन्। उनी आफ्ना महिमाले स्वर्ग छुन्छन्।

**व्यस्तभ्नाद्रोदसी मित्रो अद्भुतोऽन्तर्वावदकृणोज्ज्योतिषा तमः।**
**वि चर्मणीव धिषणे अवर्तयद्वैश्वानरो विश्वमधत्त वृष्ण्यम् ॥३॥**

अद्भुत मित्ररूपी वैश्वानरदेवले द्युलोक र पृथिवीलाई यथास्थानमा स्थापित गरेर आफ्ना तेजले अन्धकार नष्ट गरे। उनैले पृथ्वीको त्वचाका रूपमा अन्तरिक्ष फैलाए। वैश्वानरदेवले नै विश्वको सबै बल धारण गरिरहेका छन्।

**अपामुपस्थे महिषा अगृभ्णत विशो राजानमुप तस्थुर्ऋग्मियम्।**
**आ दूतोअग्निमभरद्विवस्वतो वैश्वानरं मातरिश्वा परावतः ॥४॥**

दूतका रूपमा मातरिश्वा वायुले टाढा रहेको आदित्य मण्डलबाट वैश्वानर अग्निदेवलाई यस लोकमा लिएर आए। महान् कर्म भएका मरुत्हरूले उनलाई अन्तरिक्षका जलका बीचमा धारण गरे। ज्ञानसम्पन्न मानिसले उनै श्रेष्ठ स्वामीको स्तुति गरे।

**युगेयुगे विदथ्यं गृणद्भ्योऽग्ने रयिं यशसं धेहि नव्यसीम्।**
**पव्येव राजन्नघशंसमजर नीचा नि वृश्च वनिनं न तेजसा ॥५॥**

हे अग्निदेव ! जसले यज्ञ गर्दाखेरि नयाँ स्तोत्रले तिमीलाई स्तुति गर्दछन्, तिनलाई तिमी यशस्वी सन्तान र धनऐश्वर्य प्रदान गर। हे अजर अग्निदेव ! वज्रले वृक्ष विनाश गरेझैं हाम्रा शत्रु विनाश गर।

**अस्माकमग्ने मघवत्सु धारयानामि क्षत्रमजरं सुवीर्यम्।**
**वयं जयेम शतिनं सहस्रिणं वैश्वानर वाजमग्ने तवोतिभिः ॥६॥**

हे अग्निदेव ! तिमी हविष्यान्न एवं धनऐश्वर्यले समृद्ध व्यक्तिहरूभित्र कहिल्यै नझुक्ने, चिरयुवा, श्रेष्ठ बल, वीर्ययुक्त क्षात्रबल स्थापित गर। हे वैश्वानर अग्निदेव ! तिम्रा संरक्षणमा हामी हजारौं गुना बढी सामर्थ्य, ऐश्वर्य आदि प्राप्त गरौं।

**अदब्धेभिस्तव गोपाभिरिष्टेऽस्माकं पाहि त्रिषधस्थ सूरीन्।**
**रक्षा च नो ददुषां शर्धो अग्ने वैश्वानर प्र च तारीः स्तवानः ॥७॥**

हे त्रिलोकमा स्थित अग्निदेव ! तिमी अविनाशी हौ। हे वैश्वानर अग्निदेव ! तिमी स्तोता र याजकलाई आफ्ना संरक्षक बलले रक्षा गर र कृपा गरेर हाम्रो दुःख हटाऊ।

[सूक्त - ९]

**ऋषि** - भरद्वाज बार्हस्पत्य। **देवता** - वैश्वानर अग्नि। **छन्द** - त्रिष्टुप्।

**अहश्च कृष्णमहरर्जुनं च वि वर्तेते रजसी वेद्याभिः।**
**वैश्वानरो जायमानो न राजावातिरज्ज्योतिषाग्निस्तमांसि ॥१॥**

काला रात र उज्याला दिन नियमित रूपमा आआफ्ना रङ्गले संसार रङ्गाउँछन्। हे वैश्वानर अग्निदेव ! तिमी तेजस्वी स्वामीझैं प्रकट भएर अन्धकार नाश गर।

**नाहं तन्तुं न वि जानाम्योतुं न यं वयन्ति समरेऽतमानाः।**
**कस्य स्वित्पुत्र इह वक्त्वानि परो वदात्यवरेण पित्रा ॥२॥**

हामी ठाडा र तेर्छा धागाको बनोट र बुनोट जान्दैनौं। निरन्तर प्रयत्नशीलहरूले बुनेका वस्त्रका सम्बन्धमा पनि हामी अनभिज्ञ छौं। यस लोकमा कसको पुत्र योग्य बन्छ र पितासित मिलेर यस अव्यक्त संसारका नियम सुनिश्चित रूपले भन्न सक्ला ?

**स इत्तन्तुं स वि जानात्योतुं स वक्त्वान्यृतुथा वदाति।**
**य ईं चिकेतदमृतस्य गोपा अवश्चरन्परो अन्येन पश्यन् ॥३॥**

वैश्वानर अग्निदेव ठाडा तान र तेर्छा र बानका विषयमा जान्दछन्। ऋतुअनुसार कर्मको उपदेश उनैले दिन्छन्। अग्निदेव अमरताको रक्षक भएर भूलोकमा विचरण गर्दछन् र दूर आकाशमा आदित्यका रूपमा रहेका सबैका द्रष्टा हुन्।

**अयं होता प्रथमः पश्यतेममिदं ज्योतिरमृतं मर्त्येषु।**
**अयं स जज्ञे ध्रुव आ निषत्तोऽमर्त्यस्तन्वा३ वर्धमानः ॥४॥**

वैश्वानर अग्निदेव प्रथम होता हुन्। हे मनुका पुत्रहरू हो ! यिनलाई राम्रोसित चिन। अग्निदेव

अविनाशी, स्थिर, सर्वत्र व्याप्त र शरीरले नित्य बढ्दछन्। मरणशील प्राणीका बीचमा अमर ज्योतिका रूप यिनै हुन्।

**ध्रुवं ज्योतिर्निहितं दृशये कं मनो जविष्ठं पतयत्स्वन्तः।**
**विश्वे देवाः समनसः सकेता एकं क्रतुमभि वि यन्ति साधु ॥५॥**

स्थिर रहँदै पनि मनभन्दा बढी तीव्र गतिले हिँड्ने वैश्वानर अग्निदेव आनन्ददायक मार्ग देखाउनका लागि प्राणीभित्र निवास गर्दछन्। देवताहरू, एकै मन र समान प्रज्ञासम्पन्न भएर असल कर्म गर्ने वैश्वानरदेवका सामु आउँछन्।

**वि मे कर्णा पतयतो वि चक्षुर्वीदं ज्योतिर्हृदय आहितं यत्।**
**वि मे मनश्चरति दूरआधीः किं स्विद्वक्ष्यामि किमु नू मनिष्ये ॥६॥**

हे वैश्वानर अग्निदेव ! हाम्रा कान तिम्रो गुण सुन्नका लागि र आँखा तिम्रो दिव्य दर्शनका निम्ति उत्कण्ठित छन्। आन्तरिक ज्योतिले तिम्रो स्वरूप जान्ने कामना गर्दछ। दूरस्थ ज्योतिको विचार गर्न मन भौंतारिएको छ। हामी यसभन्दा बढी के सोचौं र भनौं ?

**विश्वे देवा अनमस्यन्भियानास्त्वामग्ने तमसि तस्थिवांसम्।**
**वैश्वानरोऽवतूतये नोऽमर्त्योऽवतूतये नः ॥७॥**

हे वैश्वानर अग्निदेव ! अन्धकारमा वास गर्ने तिमीलाई सबै देवताहरू प्रणाम गर्दछन्। अन्धकारदेखि डराएका हामी सबैलाई यिनै वैश्वानर अग्निदेवले रक्षा गरुन्।

## [सूक्त – १०]

**ऋषि** – भारद्वाज बार्हस्पत्य। **देवता** – अग्नि। **छन्द** – त्रिष्टुप्।

**पुरो वो मन्द्रं दिव्यं सुवृक्तिं प्रयति यज्ञे अग्निमध्वरे दधिध्वम्।**
**पुर उक्थेभिः स हि नो विभावा स्वध्वरा करति जातवेदाः ॥१॥**

हे विद्वान्हरू हो ! यो यज्ञ निर्दोष र निर्विघ्न सम्पन्न गर्नका लागि स्तोत्र गाउँदै कल्याणकारी अग्निदेवलाई आफ्ना सामु स्थापित गर। देदीप्यमान अग्निदेवले हाम्रो यज्ञ सफल बनाउँछन्।

**तमु द्युमः पुर्वणीक होतरग्ने अग्निभिर्मनुष इधानः।**
**स्तोमं यमस्मै ममतेव शूषं घृतं न शुचि मतयः पवन्ते ॥२॥**

अनेक देदीप्यमान ज्वाला भएका हे अग्निदेव ! तिमी देवताहरूलाई आह्वान गर्दछौ। हे अग्निदेव ! तिमी अन्य अग्निहरूका साथ प्रज्वलित भएर, सुखदायी, पवित्र एवं घिउजस्तै बल बढाउनमा समर्थ, परम श्रेष्ठ स्तोत्र सुन। यी स्तोत्र बुद्धिमान् स्तोताले आत्मीयतापूर्वक उच्चारण गर्छन्।

**पीपाय स श्रवसा मर्त्येषु यो अग्नये ददाश विप्र उक्थैः।**
**चित्राभिस्तमूतिभिश्चित्रशोचिर्व्रजस्य साता गोमतो दधाति ॥३॥**

अग्निदवका निम्ति स्तोत्र गाउँदै हवि अर्पित गर्ने मानिसलाई अग्निदेव समृद्धि प्रदान गर्दछन्। उनी अद्भुत रक्षा साधनसहित गाईको समूहका लागि पनि सहायक छन्।

**आ यः पप्रौ जायमान उर्वी दूरेदृशा भासा कृष्णाध्वा।**
**अध बहु चित्तम ऊर्म्यायास्तिरः शोचिषा ददृशे पावकः ॥४॥**

धुवाँ भरिएको कालो मार्गमा अग्निदेव प्रकट भएर टाढै देखिने कान्तिले द्यावापृथिवी व्याप्त गर्दछन्। अग्निदेव रातको बाक्लो अन्धकार आफ्ना प्रकाशले हटाउँछन्।

**नू नश्चित्रं पुरुवाजाभिरूती अग्ने रयिं मघवद्भ्यश्च धेहि।**
**ये राधसा श्रवसा चात्यन्यान्त्सुवीर्येभिश्चाभि सन्ति जनान् ॥५॥**

हे अग्निदेव ! हामी हविष्यान्न सम्पदा हुनेहरूका लागि तिमी प्रचुर धन र संरक्षण प्रदान गर। अन्य मानिसका भन्दा विशिष्ट र श्रेष्ठ अन्न, धन, यश र पराक्रमी पुत्र प्रदान गर।

**इमं यज्ञं चनोधा अग्न उशन्यं त आसानो जुहुते हविष्मान्।**
**भरद्वाजेषु दधिषे सुवृक्तिमवीर्वाजस्य गध्यस्य सातौ ॥६॥**

हे अग्निदेव ! हविष्यान्न तिमीलाई प्रिय छ। तिम्रा लागि याजकले जुन हविष्यान्नयुक्त हवि अर्पित गर्दछन्, त्यो ग्रहण गर। यजमानमाथि कृपा गरेर अनेकौं अन्न प्रदान गर।

**वि द्वेषांसीनुहि वर्धयेडां मदेम शतहिमाः सुवीराः ॥७॥**

हे अग्निदेव ! हामीसित द्वेष गर्ने हाम्रा शत्रु पर हटाऊ र हाम्रो अन्न बढाऊ। हामी उत्तम र पराक्रमी पुत्रपौत्रादिले युक्त भएर सय वटा हेमन्तभरि आनन्दले रहौं।

[सूक्त - ११]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**यजस्व होतरिषितो यजीयानग्ने बाधो मरुतां न प्रयुक्ति।**
**आ नो मित्रावरुणा नासत्या द्यावा होत्राय पृथिवी ववृत्याः ॥१॥**

हे देवताहरूलाई बोलाउने तेजस्वी अग्निदेव ! हामीबाट पूजित भएर मरुत्‌हरूलाई सङ्गठित गर। त्यसपछि मित्र, वरुण, ऋतदेव, अश्विनीकुमार र द्यावापृथिवीलाई हाम्रा यज्ञमा बोलाऊ।

**त्वं होता मन्द्रतमो नो अध्रुगन्तर्देवो विदथा मर्त्येषु।**
**पावकया जुह्वा३ वह्निरासाग्ने यजस्व तन्वं१ तव स्वाम् ॥२॥**

हे अग्निदेव ! तिमी पूजनीय छौ र मानिसप्रति द्रोहरहित छौ। तिमी आहुति लिएर जाने र आनन्ददाता हौ। देवताहरूको मुखको रूपमा रहेका हे अग्निदेव ! तिमी हवि ग्रहण गरेर आफ्नो शरीर पनि पोषण गर।

**धन्या चिद्धि त्वे धिषणा वष्टि प्र देवाञ्जन्म गृणते यजध्यै।**
**वेपिष्ठो अङ्गिरसां यद्ध विप्रो मधुच्छन्दो भनति रेभ इष्टौ ॥३॥**

हे अग्निदेव ! धनको इच्छा गर्ने बुद्धिले तिम्रो भक्ति गरेको छ। इन्द्र आदि देवताहरूको प्रसन्नताका लागि गरिने यज्ञ तिमी प्रसन्न भएपछि सफल हुन्छ। अङ्गिरा ऋषि सर्वोत्तम प्रकारले तिम्रो स्तुति गर्दछन् र विद्वान् भारद्वाज मधुर छन्द गाउँछन्।

**अदिद्युतत्स्वपाको विभावाग्ने यजस्व रोदसी उरूची।**
**आयुं न यं नमसा रातहव्या अञ्जन्ति सुप्रयसं पञ्च जनाः ॥४॥**

बुद्धिमान् र आभायुक्त अग्निदेव विशिष्ट रूपमा शोभायमान छन्। तिनी विस्तृत द्युलोक र भूलोकलाई आहुतिले पोषण गर्दछन्। पाँचै वर्णका मानिस अतिथिलाई झैं सत्कारका साथ उचित हवि ग्रहण गर्ने अग्निदेवलाई हविष्यान्नद्वारा सन्तुष्ट गराउन्।

**वृञ्जे ह यन्नमसा बर्हिरग्नावयामि स्रुग्घृतवती सुवृक्तिः।**
**अम्यक्षि सद्म सदने पृथिव्या अश्रायि यज्ञः सूर्ये न चक्षुः ॥५॥**

पृथ्वी माथिका यज्ञशालामा यज्ञवेदी बनाएर उत्तम, सफा घिउमा चोपिएको सुरो आदि साधन तयार गरिएका बेला अन्नको आहुति प्रदान गरिन्छ। आँखाले सूर्यको आश्रय पाएझैं याजकले गरेका यजनबाट यज्ञदेव वृद्धि प्राप्त गर्दछन्।

**दशस्या नः पुर्वणीक होतर्देवेभिरग्ने अग्निभिरिधानः।**
**रायः सूनोसहसोवावसाना अति स्रसेम वृजनं नांहः ॥६॥**

अनेकौं किसिमका शिखाले युक्त, देवताहरूलाई आह्वान गर्ने हे अग्निदेव ! तिमी विविध दिव्य अग्निका साथ प्रसन्न भएर हामीलाई धन प्रदान गर। हे बल उत्पादक अग्निदेव ! हवि प्रदान गर्ने हामीलाई तिमी शत्रुजस्तो पापबाट पनि जोगाऊ।

[सूक्त - १२]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**मध्ये होता दुरोणे बर्हिषो राडग्निस्तोदस्य रोदसी यजध्यै।**
**अयं स सूनुः सहस ऋतावा दूरात्सूर्यो न शोचिषा ततान ॥१॥**

देवतालाई आह्वान गर्ने र यज्ञका पालक अग्निदेव द्यावापृथिवीलाई पुष्ट गर्नका लागि याजकका घरमा प्रतिष्ठित हुन्छन्। बल उत्पन्न गर्ने, यज्ञकर्ता अग्निदेव आफ्ना तेजले सम्पूर्ण जगत्‌लाई उसै गरी प्रकाशित गर्दछन्, जसरी सूर्यदेव टाढैबाट सम्पूर्ण विश्वलाई प्रकाशित गर्दछन्।

**आ यस्मिन्त्वे स्वपाके यजत्र यक्षद्राजन्त्सर्वतातेव नु द्यौः।**
**त्रिषधस्थस्ततरुषो न जंहो हव्या मघानि मानुषा यजध्यै ॥२॥**

हे तेजस्वी, पूज्य यज्ञशील अग्निदेव ! मानिसले दिएको हव्य पदार्थ तीनै लोकको उद्धार गर्ने सूर्यदेवझैं व्यापक भएर तिमी देवताहरूसम्म पुर्‍याउँछौ। हामी याजकहरू श्रद्धासहित हवि अर्पित गर्दछौं।

तेजिष्ठा यस्यारतिर्वनेराट् तोदो अध्वन्न वृधसानो अद्यौत्।
अद्रोघो न द्रविता चेतति त्मन्नमर्त्योऽवर्त्र ओषधीषु ॥३॥

सूर्यदेवजस्तै अग्निदेवको दीप्ति बढ्नाले आफ्नो मार्ग प्रकाशित गर्दछन्। सर्वव्यापी, अति प्रदीप्त ज्वालाले वनमा प्रज्वलित हुने, अमर, द्रोहरहित, अविराम अग्निदेवले सबैको कल्याण गर्दै समस्त जगत्लाई प्रकाशित गरुन्।

सास्माकेभिरेतरी न शूषैरग्निः ष्टवे दम आ जातवेदाः।
द्रवन्नो वन्वन् क्रत्वा नार्वोस्रः पितेव जारयायि यज्ञैः ॥४॥

ज्ञानी अग्निदेव यज्ञकर्ताहरूले गाएका गायनबाट जसरी प्रसन्न हुन्छन्, उसै गरी हामीले गाउँदै गरेका उत्तम स्तोत्रले पनि प्रसन्न हुन्छन्। साँढेजस्तै बलिया, अश्वजस्तै गतिमान र वृक्ष भस्म गराउने अग्निदेवलाई यजनकर्ता मानिसहरू स्तुति गर्दछन्।

अध स्मास्य पनयन्ति भासो वृथा यत्तक्षदनुयाति पृथ्वीम्।
सदो यः स्पन्द्रो विषितो धवीयानृणो न तायुरति धन्वा राट्॥५॥

अग्निदेव सहज रूपमा जङ्गल डढाएर पृथ्वीमा विचरण गर्दछन्। पृथ्वीमा प्रकाशित भएर अति वेगका साथ विनाप्रतिबन्ध भ्रमण गर्दछन्। त्यस बेला अग्निदेवका आभाको स्तुति यस लोकमा स्तोताहरू गर्दछन्।

स त्वं नो अर्वन्निदाया विश्वेभिरग्ने अग्निभिरिधानः।
वेषि रायो वि यासि दुच्छुना मदेम शतहिमाः सुवीराः ॥६॥

हे शत्रुनाशक अग्निदेव ! तिमी विभिन्न रूपमा प्रकट हुन्छौ। हामीलाई निन्दाबाट रक्षा गर र सम्पत्ति प्रदान गर। हामी असल योद्धाजस्ता पुत्रपौत्रादिले सम्पन्न भएर शत्रुको सेना नाश गरौँ। सय हेमन्तभरि आनन्दका साथ जीवन निर्वाह गरौँ।

[सूक्त - १३]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

त्वद्विश्वा सुभग सौभगान्यग्ने वि यन्ति वनिनो न वयाः।
श्रुष्टी रयिर्वाजो वृत्रतूर्ये दिवो वृष्टिरीड्यो रीतिरपाम् ॥१॥

हे श्रेष्ठ भाग्यवान् अग्निदेव ! तिमी सबै ऐश्वर्यका उत्पादक हौ। वृक्षबाट विभिन्न शाखा उत्पन्न भएझैँ शत्रु जित्ने बल, धन र पर्जन्यको वर्षा तिमीबाट उत्पन्न हुन्छन्। आकाशबाट वर्षा गराउनका निम्ति पानी लैजाने तिमी स्तुति योग्य छौ।

त्वं भगो न आ हि रत्नमिषे परिज्मेव क्षयसि दस्मवर्चाः।
अग्ने मित्रो न बृहत ऋतस्यासि क्षत्ता वामस्य देव भूरेः ॥२॥

हे भाग्यवान् अग्निदेव ! हामीलाई सुन्दर धन प्रदान गर। तिमी वायुजस्तै सर्वव्यापी र मित्रजस्तै सन्मार्गमा लैजाने हौ। हे तेजस्वी ! हामीलाई ऐश्वर्य प्रदान गर।

स सत्पतिः शवसा हन्ति वृत्रमग्ने विप्रो वि पणेर्भर्ति वाजम्।
यं त्वं प्रचेत ऋतजात राया सजोषा नप्त्रापां हिनोषि ॥३॥

श्रेष्ठ ज्ञानले सम्पन्न, सत्पुरुषका पालक हे अग्निदेव ! यज्ञबाट उत्पन्न ऋतजात ऐश्वर्यलाई पानी बर्सन नदिने मेघसित जुधन तिमी प्रेरित गर्दछौ। उसै ऋतजातले वर्षामा बाधा हाल्ने पणिलाई नष्ट गर्दछ।

यस्ते सूनो सहसो गीर्भिरुक्थैर्यज्ञैर्मर्तो निशितिं वेद्यानट्।
विश्वं स देव प्रति वारमग्ने धत्ते धान्यं पत्यते वसव्यैः ॥४॥

हे बलका पुत्र तेजस्वी अग्निदेव ! जजसले यज्ञ आदि कर्म र स्तुतिद्वारा तिम्रो उपासना गर्दै तिम्रो तेज धारण गर्दछन्, उनीहरूले नै अन्न, धन र ऐश्वर्य प्राप्त गर्दछन्।

ता नृभ्य आ सौश्रवा सुवीराग्ने सूनो सहसः पुष्यसे धाः।
कृणोषि यच्छवसा भूरि पश्वो वयो वृकायारये जसुरये ॥५॥

हे बलका पुत्र अग्निदेव ! तिमीले जुन पशु र अन्न क्रूर, द्वेष गर्ने शत्रुलाई प्रदान गरेका छौ, हे अग्निदेव ! त्यो सबै हामी शौर्यवान्हरूका लागि प्रदान गर।

वद्मा सूनो सहसो नो विहाया अग्ने तोकं तनयं वाजी नो दाः।
विश्वाभिर्गीर्भिरभि पूर्तिमश्यां मदेम शतहिमाः सुवीराः ॥६॥

हे बलका पुत्र एवं ज्ञानी अग्निदेव ! हामीलाई तिमी हितकारी बाटो देखाऊ। हाम्रो उत्तम कामना पूर्ति होस्। हामी धन, अन्न र ऐश्वर्ययुक्त पुत्रपौत्रादिसहित सय हेमन्त जीवन निर्वाह गरौँ।

[सूक्त - १४]

ऋषि – भारद्वाज बार्हस्पत्य। देवता – अग्नि। छन्द – अनुष्टुप् शक्वरी।

अग्ना यो मर्त्यो दुवो धियं जुजोष धीतिभिः।
भसन्नु ष प्र पूर्व्य इषं वुरीतावसे ॥१॥

स्तुतिका साथ जुन मानिसले यज्ञ गर्दछ र सद्बुद्धि प्राप्त गर्दछ, ऊ नै यशस्वीहरूमा अग्रणी भएर सुरक्षका निम्ति पर्याप्त धनधान्य प्राप्त गर्दछ।

अग्निरिद्धि प्रचेता अग्निर्वेधस्तम ऋषिः।
अग्निं होतारमीळते यज्ञेषु मनुषो विशः ॥२॥

अग्निदेव नै श्रेष्ठ ज्ञानी र सत्कर्मका प्रेरक सर्वद्रष्टा हुन्। मानिसहरू पुत्रादिले सहित भएर यज्ञमा यिनैको स्तुति गर्दछन्।

नाना ह्यग्नेऽवसे स्पर्धन्ते रायो अर्यः।
तूर्वन्तो दस्युमायवो व्रतैः सीक्षन्तो अव्रतम् ॥३॥

हे अग्निदेव ! जसले तिम्रो यजन गर्दछ, उसले यज्ञ नगर्नेहरूलाई पराजित गर्दछ। शत्रुबाट छुट्टिएर आएको धन, ऐश्वर्य स्तुति गर्नेहरूले पाउँछन्।

अग्निरप्सामृतीषहं वीरं ददाति सत्पतिम्।
यस्य त्रसन्ति शवसः सञ्चक्षि शत्रवो भिया ॥४॥

अग्निदेव स्तुति गर्ने स्तोताका लागि सन्मार्गगामी, सत्कर्मका रक्षक, शत्रुजयी, श्रेष्ठ पुत्र प्रदायक हुन्छन्। त्यस पुत्रबाट शत्रु पनि भयभीत रहन्छन्।

अग्निर्हि विद्मना निदो देवोमर्तमुरुष्यति। सहावा यस्यावृतो रयिर्वाजेष्ववृतः ॥

अग्निदेवले आफ्ना तेजस्वी ज्ञानका बलले निन्दाबाट याजकहरूलाई रक्षा गर्दछन् र युद्धका समयमा धन सुरक्षित गर्दछन्।

अच्छा नो मित्रमहो देव देवानग्ने वोचः सुमतिं रोदस्योः। वीहि स्वस्तिं
सुक्षितिं दिवो नृन्द्विषो अंहांसि दुरिता तरेम ता तरेम तवावसा तरेम ॥६॥

हे मित्रले भैँ रक्षा गर्ने, तेजस्वी, गुणसम्पन्न अग्निदेव ! तिमी द्यावापृथिवीमा व्याप्त भएर स्तोताले गरेको स्तुति देवताहरूसम्म पुऱ्याउँछौ। तिमी आफ्ना रक्षासाधनले पाप, कष्ट र शत्रुबाट हाम्रो रक्षा गर्दछौ। हामीलाई उत्तम आवास आदि प्रदान गर।

[सूक्त - १५]

ऋषि – भारद्वाज बार्हस्पत्य। देवता – अग्नि। छन्द – जगती त्रिष्टुप्।

इममू षु वो अतिथिमुषर्बुधं विश्वासां विशां पतिमृञ्जसे गिरा।
वेतीद्दिवो जनुषा कच्चिदा शुचिर्ज्योक्चिदत्ति गर्भो यदच्युतम् ॥१॥

अतिथिजस्तै पूज्य, प्रजापालक, स्वभावतः पवित्र र उषा कालमा प्रज्वलित अग्निदेव द्युलोकबाट उत्पन्न भएर द्यावापृथिवीमा विचरण गर्दै अर्पण गरेको हवि ग्रहण गर्दछन्। हे विद्वान्हरू हो ! यस्ता अग्निदेवलाई स्तुति गरेर प्रसन्न गराओ।

मित्रं न यं सुधितं भृगवो दधुर्वनस्पतावीड्यमूर्ध्वशोचिषम्।
स त्वं सुप्रीतो वीतहव्य अद्भुत प्रशस्तिभिर्महयसे दिवेदिवे ॥२॥

हे अरणीभित्र व्याप्त, स्तुति योग्य, मित्रवत् अग्निदेव ! तिमीलाई भृगु आदि ऋषिले स्थापित गरेका हुन्। हे अद्भुत अग्निदेव ! तिमी ऊर्ध्वगामी ज्वालासम्पन्न छौ। तिमी कृपालु हुनाले ज्ञानीहरू प्रतिदिन उत्तम स्तोत्रले तिमीलाई स्तुति गर्दछन्।

स त्वं दक्षस्यावृको वृधो भूरर्यः परस्यान्तरस्य तरुषः। रायः सूनोसहसो मर्त्येष्वा छर्दियच्छ वीतहव्याय सप्रथो भरद्वाजाय सप्रथः ॥३॥

हे अग्निदेव ! तिमी दयालु हुनाले चतुर मानिसलाई सुरक्षा गर्दछौ। हे अग्निदेव ! तिमी महान् छौ। हे बलका पुत्र ! भारद्वाज वंशीलाई धन, अन्न र निवास प्रदान गर।

द्युतानं वो अतिथिं स्वर्णरमग्निं होतारं मनुषः स्वध्वरम्।
विप्रं न द्युक्षवचसं सुवृक्तिभिर्हव्यवाहमरतिं देवमृञ्जसे ॥४॥

हे विद्वान् हो ! देदीप्यमान, दिव्य गुणयुक्त, हविवाहक, अतिथिजस्तै पूज्य, मानिसका यज्ञमा देवता बोलाउने, स्वर्गसम्म हवि पुऱ्याउने, उत्तम यज्ञ गर्ने, विद्वान्झैं कान्ति भएका अग्निदेवलाई तिमीहरू उत्तम स्तुतिले प्रसन्न गराओ।

पावकया यश्चितयन्त्या कृपा क्षमन्रुरुच उषसो न भानुना।
तूर्वन्न यामन्नेतशस्य नू रण आ यो घृणे न ततृषाणो अजरः ॥५॥

उषा कालको प्रकाशजस्ता अग्निदेवबाट पृथिवीलाई पवित्रता र चेतना प्राप्त हुँदा पृथ्वी तेजले शोभायमान हुन्छ। हे वीतहव्य ! तिमीहरू सर्वभक्षी र अजर अग्निदेवको अर्चना गर। उनी एतश ऋषिको रक्षाका लागि रणभूमिमा शीघ्र चैतन्य हुन्छन्।

अग्निमग्निं वः समिधा दुवस्यत प्रियंप्रियं वोअतिथिं गृणीषणि। उप वो गीर्भिरमृतं विवासत देवो देवेषु वनते हि वार्यं देवो देवेषु वनते हि नो दुवः ।६।

हे स्तोताहरू हो ! अतिथिजस्तै पूज्य र अत्यन्त प्रिय अग्निदेवलाई समिधाले सेवा गर। अमर अग्निदेव देवताहरूमा वरणीय सम्पत्ति धारण गर्दछन् र हाम्रो अर्चना स्वीकार गर्दछन्। त्यस्ता अग्निदेवको सेवा स्तोत्र आदि वाणीले गरौं।

समिद्धमग्निं समिधा गिरा गृणे शुचिं पावकं पुरो अध्वरे ध्रुवम्।
विप्रं होतारं पुरुवारमद्रुहं कविं सुम्नैरीमहे जातवेदसम् ॥७॥

समिधाबाट प्रकट अग्निदेवलाई हामी वाणीले अर्चना गर्दछौं। शुद्ध, स्थिर र पवित्र गराउने अग्निदेवलाई यज्ञका अग्रिम स्थानमा प्रतिष्ठित गर्दछौं। विशिष्ट ज्ञानले सम्पन्न हविदाताहरूले धारण गर्न योग्य, द्रोहरहित, ज्ञानवान् र सर्वज्ञाता अग्निदेवलाई ऐश्वर्य प्राप्तिका लागि हामी स्तुति गर्दछौं।

त्वां दूतमग्ने अमृतं युगेयुगे हव्यवाहं दधिरे पायुमीड्यम्।
देवासश्च मर्तासश्च जागृविं विभुं विश्पतिं नमसा नि षेदिरे ॥८॥

हे अग्निदेव ! अमर देवता र मानिसले प्रत्येक शुभ यज्ञमा हविदाता, रक्षक र स्तुति गर्न योग्य तिमीलाई दूतका रूपमा नियुक्त गर्दछन्। जागृतिप्रधान, विस्तारशील र प्रजाको रक्षा गर्नमा सहायक मानेर मानिसहरू तिमीलाई प्रणाम गर्दै उपासना गर्दछन्।

विभूषन्नग्न उभयाँ अनु व्रता दूतो देवानां रजसी समीयसे।
यत्ते धीतिं सुमतिमावृणीमहेऽध स्मा नस्त्रिवरूथः शिवो भव ॥९॥

देवता र मानिस दुवैलाई महिमावान् बनाउँदै अनुशासनप्रिय, नियमपालक देवताहरूका दूत बनेर दिव्यलोक र यस लोकमा हवि लिएर जाने हे अग्निदेव ! हामी तिम्रो स्तुति गर्दछौं। तीनै स्थानमा विचरण गर्दै हामीलाई सुख प्रदान गर।

तं सुप्रतीकं सुदृशं स्वञ्चमविद्वांसो विदुष्टरं सपेम।
स यक्षद्विश्वा वयुनानि विद्वान्प्र हव्यमग्निरमृतेषु वोचत् ॥१०॥

मनोहर रूप भएका, गमनशील, सर्वज्ञ र सुहाउँदो शरीरका अग्निदेवलाई हामी अल्पज्ञ मानिसहरू यजन गर्दछौं। सर्वकर्मज्ञाता अग्निले हाम्रा हविको वर्णन देवताहरूसित गर्दै अनि देवताहरूका लागि यज्ञ सम्पन्न गराऊन्।

तमग्ने पास्युत तं पिपर्षि यस्त आनट् कवये शूर धीतिम्।
यज्ञस्य वा निशितिं वोदितिं वा तमित्पृणक्षि शवसोत राया ॥११॥

हे शौर्यवान् अग्निदेव ! बुद्धिमान् मानिस तिम्रा निम्ति कर्म गर्दछन्, रक्षा गर्दै उनीहरूको असल कामना पूरा गराऊ। प्रगतिका साथ यज्ञ गर्ने संस्कारवान् याजकलाई तिमी प्रचुर बल प्रदान गर।

त्वमग्ने वनुष्यतो नि पाहि त्वमु नः सहसावन्नवद्यात्।
सं त्वा ध्वस्मन्वदभ्येतु पाथः सं रयिः स्पृहयाय्यः सहस्री ॥१२॥

हे पराक्रमी अग्निदेव ! हामीलाई शत्रु र पापबाट जोगाऊ। हामीले अर्पित गरेको हवि ग्रहण गर्दै स्तुति गर्नेहरूलाई मन पर्ने हजारौं किसिमका ऐश्वर्य प्रदान गर।

अग्निर्होता गृहपतिः स राजा विश्वा वेद जनिमा जातवेदाः।
देवानामुत यो मर्त्यानां यजिष्ठः स प्र यजतामृतावा ॥१३॥

तेजस्वी, सर्वज्ञ, देवताहरूलाई आह्वान गर्ने, सबै प्राणीका ज्ञाता अग्निदेव हाम्रा घरका स्वामी हुन्। अग्निदेव मनुष्य र देवताहरूमा श्रेष्ठ याजक हुन्, उनै सत्यवान् अग्निदेवले विधिपूर्वक यज्ञ गरुन्।

अग्ने यदद्य विशो अध्वरस्य होतः पावकशोचे वेष्ट्वं हि यज्वा।
ऋता यजासि महिना वि यद्भूर्हव्या वह यविष्ठ या ते अद्य ॥१४॥

हे पावन ज्वाला भएका यज्ञकर्ता अग्निदेव ! तिमी देवताहरूका निम्ति यज्ञ गर्दछौ। तिमी यस यज्ञमा देवताहरूको यज्ञ गर र यस बेला याजक जुन इच्छाले यज्ञ गरिरहेका छन्, त्यो पूरा गराऊ। हे चिरयुवा अग्निदेव ! तिमी आफ्नै कारण महान् छौ। हाम्रो हवि ग्रहण गर।

अभि प्रयांसि सुधितानि हि ख्यो नि त्वा दधीत रोदसी यजध्यै। अवा नो
मघवन्वाजसातावग्ने विश्वानी दुरिता तरेम ता तरेम तवावसा तरेम ॥१५॥

हे अग्निदेव ! याजकहरू द्यावापृथिवीका निम्ति यज्ञ गर्नका लागि तिमीलाई प्रतिष्ठित गर्दछन्। तिमी वेदीमा उचित किसिमले राखिएको हवि हेर। हे अग्निदेव ! सङ्ग्राममा तिमी हाम्रो रक्षा गर, हामी सबै खालका दुःखबाट जोगिऔं।

अग्ने विश्वेभिः स्वनीक देवैरूर्णावन्तं प्रथमः सीद योनिम्।
कुलायिनं घृतवन्तं सवित्रे यज्ञं नय यजमानाय साधु ॥१६॥

अग्निदेव सबै देवताहरूमा अग्रणी हुन्। हे सुन्दर ज्वाला भएका अग्निदेव ! तिमी ऊनीको आसन र घिउले भरिएको वेदीमा विराजमान भएर हवि प्रदान गर्ने यजमानका यज्ञलाई उत्तम किसिमले देवताहरूसम्म पुऱ्याऊ।

इममु त्यमथर्ववदग्निं मन्थन्ति वेधसः।
यमङ्कूयन्तमानयन्नमूरं श्याव्याभ्यः ॥१७॥

यज्ञको कर्म गर्ने, ज्ञानी ऋत्विक् अथवा ऋषिहरूले जसरी मन्थन गरेर अग्निलाई उत्पन्न गर्दछन् उसै गरी जताततै भ्रमण गर्ने ज्ञानी अग्निदेवलाई उनीहरू अँध्यारो ठाउँबाट ल्याएर यस यज्ञका वेदीमा स्थापित गर्दछन्।

जनिष्वा देववीतये सर्वताता स्वस्तये।
आ देवान् वक्ष्यमृतॉं ऋतावृधो यज्ञं देवेषु पिस्पृशः ॥१८॥

हे अग्निदेव ! तिमी अरणीमन्थनद्वारा प्रकट भएर देवताहरूको कामना गर्ने यजमानको कल्याणका लागि देवताहरूलाई सुस्थिर गराऊ। तिमी यज्ञवर्द्धक, अमर देवताहरूलाई यज्ञमा आह्वान गर र हाम्रो यज्ञ देवताहरूसम्म पुऱ्याऊ।

वयमु त्वा गृहपते जनानामग्ने अकर्म समिधा बृहन्तम्।
अस्थूरि नो गार्हपत्यानि सन्तु तिग्मेन नस्तेजसा सं शिशाधि ॥१९॥

हे यज्ञरक्षक अग्निदेव ! हामी समिधाद्वारा प्राणीका माझमा तिमीलाई प्रदीप्त गराउँछौं। गार्हपत्य अग्निदेवले हामीलाई पुत्र, पशु र अनेक ऐश्वर्य प्रदान गरुन्। हामीलाई तिमी तेजस्विता प्रदान गर।

[सूक्त - १६]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - अग्नि। **छन्द** - गायत्री त्रिष्टुप्।

त्वमग्ने यज्ञानां होता विश्वेषां हितः। देवेभिर्मानुषे जने ॥१॥

हे अग्निदेव ! तिमी होता र देवताहरूका आह्वानकर्ता हौ। तिमी मानिसका यज्ञमा देवताहरूबाट होता निर्धारित गरिएका छौ।

स नो मन्द्राभिरध्वरे जिह्वाभिर्यजा महः। आ देवान्वक्षि यक्षि च ॥२॥

हे अग्निदेव ! तिमी आफ्ना महान् ज्वालाहरूसहित यस यज्ञमा देवगणको स्तुति गर र इन्द्र आदि देवताहरूलाई आह्वान गरेर हवि प्रदान गर।

वेत्था हि वेधो अध्वनः पथश्च देवाञ्जसा। अग्ने यज्ञेषु सुक्रतो ॥३॥
हे नियन्ता, श्रेष्ठकर्मा अग्निदेव ! तिमी यज्ञका निकटस्थ एवं दूरस्थ सबै मार्गका ज्ञाता हौ। याजकहरूलाई उचित मार्गदर्शन गराऊ।

त्वामीडे अध द्विता भरतोवाजिभिः शुनम्। ईजे यज्ञेषु यज्ञियम् ॥४॥
हे तेजरूप अग्निदेव ! भरतले अनेक ऋत्विक्हरूसँग मिलेर लौकिक र अलौकिक दुवै सुख प्राप्त गर्नका लागि तिम्रो स्तुति गरे। हे यजनीय ! तिमीबाट नै अनिष्टको नाश र इच्छाको पूर्ति हुन्छ। हामी तिम्रो स्तुति र यज्ञ गर्दछौं।

त्वमिमा वार्या पुरु दिवोदासाय सुन्वते। भरद्वाजाय दाशुषे ॥५॥
हे अग्निदेव ! तिमीले सोम सिद्ध गर्ने दिवोदासलाई धेरै ऐश्वर्य प्रदान गरेका थियौ। उसै गरी भरद्वाजले पनि धनऐश्वर्य प्राप्त गरून्।

त्वं दूतो अमर्त्य आ वहा दैव्यं जनम्। शृण्वन्विप्रस्य सुष्टुतिम् ॥६॥
हे अग्निदेव ! तिमी अमर छौ, तिमी दूत हौ। विद्वान् भरद्वाजले गरेको स्तुति सुन्नका लागि देवताहरूलाई हाम्रा यज्ञमा आह्वान गर।

त्वामग्ने स्वाध्यो३ मर्तासो देववीतये। यज्ञेषु देवमीडते ॥७॥
बलले प्रकट हुने सौन्दर्यवान् हे अग्निदेव ! हामी याजकहरू धनधान्य र तिम्रो सान्निध्य प्राप्त गर्ने कामनाले वन्दना गर्दछौं।

तव प्र यक्षि सन्दृशमुत क्रतुं सुदानवः। विश्वे जुषन्त कामिनः ॥८॥
स्वर्णभैँ जाज्वल्यमान हे अग्निदेव ! छायामा पाइने शीतलताभैँ हामी तिम्रो संरक्षणमा रहेर सुख प्राप्त गरौं।

त्वं होता मनुर्हितो वह्निरासा विदुष्टरः। अग्ने यक्षि दिवो विशः ॥९॥
गोरुको सिङजस्तै तेजस्वी ज्वाला भएका, वीर धनुर्धरजस्तै पराक्रमी हे अग्निदेव ! तिमीले दुष्टका आश्रयस्थलहरू नष्ट गरेका छौ।

अग्न आ याहि वीतये गृणानो हव्यदातये। नि होता सत्सि बर्हिषि ॥१०॥
हे प्रकाशक र सर्वव्यापक अग्निदेव ! हविलाई गति दिनका लागि तिमी आऊ। सबैले तिम्रो स्तुति गर्दछन्। यज्ञमा हामी तिम्रो स्वागत गर्दछौं, किनभने तिमी नै सबै पदार्थ प्रदान गर्दछौ।

तं त्वा समिद्भिरङ्गिरो घृतेन वर्धयामसि। बृहच्छोचा यविष्ठ्य ॥११॥
हे प्रकाशस्वरूप अग्निदेव ! तिमीलाई हामी समिधा र घिउले प्रदीप्त गर्दछौं। त्यसैले हे सामर्थ्यवान् ! तिमी अझै प्रखर होऊ।

स नः पृथु श्रवाय्यमच्छा देव विवाससि। बृहदग्ने सुवीर्यम् ॥१२॥
हे अग्निदेव ! हामी महान् पराक्रमी र श्रेष्ठ यशस्वी सामर्थ्य प्राप्त गर्ने बन्न सकौं। त्यसका लागि तिमी कृपा गर।

त्वामग्ने पुष्करादध्यथर्वा निरमन्थत। मूर्ध्नो विश्वस्य वाघतः ॥१३॥
परम श्रेष्ठ, अखिल विश्व धारण गर्ने हे अग्निदेव ! अथर्वाले तिमीलाई विश्वका महान्तम आधारका रूपमा अरणीमन्थनद्वारा प्रकट गरे।

तमु त्वा दध्यङ्ङृषिः पुत्र ईधे अथर्वणः। वृत्रहणं पुरन्दरम् ॥१४॥
हे अग्निदेव ! अथर्वाका पुत्र दध्यङ् ऋषिले तिमीलाई पहिलो पटक प्रदीप्त गराए। तिमी शत्रुसंहारक हौ, त्यसैले शत्रुको सहर नष्ट गर्न सक्दछौ।

तमु त्वा पाथ्योवृषा समीधे दस्युहन्तमम्। धनञ्जयं रणेरणे ॥१५॥
हे अग्निदेव ! पाथ्यवृषाले तिमीलाई प्रदीप्त गरे। तिमी असुर संहारक तथा युद्धका विजेता हौ।

एह्यू षु ब्रवाणि तेऽग्न इत्थेतरा गिरः। एभिर्वर्धास इन्दुभिः ॥१६॥
हामी तिम्रै लागि स्तुति गर्दछौं। तिमी स्तुति सुनेर प्रकट होऊ र यस सोमरसले आफ्नो महानता विस्तार गर।

यत्र क्व च ते मनो दक्षं दधस उत्तरम्। तत्रा सदः कृणवसे ॥१७॥
हे अग्निदेव ! तिमी जुन क्षेत्र र याजकदेखि खुसी हुन्छौ, त्यहाँ अत्यधिक बल धारण गराउँछौ र त्यहीँ आवास पनि बनाउँछौ।

**नहि ते पूर्तमक्षिपद्भुवन्नेमानां वसो। अथा दुवो वनवसे ॥१८॥**

हे अग्निदेव ! तिम्रो तेज आँखाका लागि हानिकारक छैन। हे व्रतपालक मानिसहरूका स्वामी ! हाम्रो प्रार्थना तिमी स्वीकार गर।

**आग्निरगामि भारतो वृत्रहा पुरुचेतनः। दिवोदासस्य सत्पतिः ॥१९॥**

अग्निदेव आहुतिका अधिपति र दिवोदासका शत्रुसंहारक हुन्। हे याजकहरू हो ! यी अग्निदेव सर्वज्ञ र रक्षक पनि हुन्। हामी स्तुतिले अग्निदेवको आह्वान गर्दछौं।

**स हि विश्वाति पार्थिवा रयिं दाशन्महित्वाना। वन्वन्नवातो अस्तृतः ॥२०॥**

अग्निदेव अपराजित, शत्रुनाशक र अहिंसित छन्। तिनै अग्निदेव आफ्ना सामर्थ्यले हामीलाई पृथ्वीमा उत्तम धनऐश्वर्य प्रदान गर्दछन्।

**स प्रत्नवन्नवीयसाग्ने द्युम्नेन संयता। बृहत्ततन्थ भानुना ॥२१॥**

हे अग्निदेव ! तिमी यस विस्तृत अन्तरिक्षलाई आफ्ना संयमित र नवीन तेजले पहिलेकै जसरी प्रकाशित गर्दै छौ।

**प्र वः सखायो अग्नये स्तोमं यज्ञं च धृष्णुया। अर्च गाय च वेधसे ॥२२॥**

हे ऋत्विक्हरू हो ! ईश्वरजस्तै शक्तिमान् र शत्रुविनाशक अग्निदेवलाई तिमीहरू आहुति र उत्तम स्तुतिले प्रसन्न गर।

**स हि यो मानुषा युगा सीदद्धोता कविक्रतुः। दूतश्च हव्यवाहनः ॥२३॥**

मेधावी, हविवाहक, यज्ञकर्ममा देवदूत र देवताका आह्वान कर्ता अग्निदेव हाम्रा यस यज्ञमा कुशका आसनमा बसून्।

**ता राजाना शुचिव्रतादित्यान्मारुतं गणम्। वसो यक्षीह रोदसी ॥२४॥**

हे अग्निदेव ! तिमी यस यज्ञमा आएपछि प्रसिद्ध, शुभकर्म गर्ने मित्रावरुणले मरुत् एवं द्यावापृथिवीका लागि यजन गरुन्। तिमी श्रेष्ठ निवास प्रदान गर्दछौ।

**वस्वी ते अग्ने सन्दृष्टिरिषयते मर्त्याय। ऊर्जो नपादमृतस्य ॥२५॥**

हे अग्निदेव ! तिमी अमर र बलशाली छौ। तिम्रा तेज दृष्टिले अन्नको इच्छा गर्ने याजकलाई अन्न र धन प्रदान गराउँछ।

**क्रत्वा दा अस्तु श्रेष्ठोऽद्य त्वा वन्वन्त्सुरेक्णाः। मर्त आनाश सुवृक्तिम् ॥२६॥**

हे अग्निदेव ! आजका याजकहरू तिम्रो सेवा र श्रेष्ठ कर्म गर्ने होऊन्। उनीहरू सधैं उत्तम कुरो बोलून्।

**ते ते अग्ने त्वोता इ षयन्तो विश्वमायुः।**
**तरन्तो अर्यो अरातीर्वन्वन्तो अर्यो अरातीः ॥२७॥**

हे अग्निदेव ! तिम्रो स्तुति गर्नेहरू तिम्रै सुरक्षामा रहेर शत्रुको सेना जितेर, शत्रुको नाश गर्दछन् र पूरा आयुसम्म अन्न आदिसहित सुखले जीवन व्यतीत गर्दछन्।

**अग्निस्तिग्मेन शोचिषा यासद्विश्वं न्य१त्रिणम्। अग्निर्नो वनते रयिम् ॥२८॥**

हे अग्निदेव ! तिमी आफ्ना प्रज्वलित, तीक्ष्ण ज्वालाले विघ्नकारक तत्त्व नष्ट गर अनि जसले तिम्रो उपासना र स्तुति गर्दछन्, तिनलाई बल तथा ऐश्वर्य प्रदान गर।

**सुवीरं रयिमा भर जातवेदो विचर्षणे। जहि रक्षांसि सुक्रतो ॥२९॥**

हे सर्वज्ञाता अग्निदेव ! दुष्ट संहार गरेर हामीलाई श्रेष्ठ सन्तानयुक्त ऐश्वर्य देऊ।

**त्वं नः पाह्यंहसो जातवेदो अघायतः। रक्षा णो ब्रह्मणस्कवे ॥३०॥**

हे ज्ञानी अग्निदेव ! तिमी ज्ञानका द्रष्टा हौ। पाप र पापी शत्रुबाट हाम्रो रक्षा गर।

**यो नो अग्ने दुरेव आ मर्तो वधाय दाशति। तस्मान्नः पाह्यंहसः ॥३१॥**

हे अग्निदेव ! दुर्भावनापूर्वक हामीलाई मार्न प्रयास गर्ने मानिसबाट र पापबाट पनि हामीलाई रक्षा गर।

**त्वं तं देव जिह्वया परि बाधस्व दुष्कृतम्। मर्तो यो नो जिघांसति ॥३२॥**

हे अग्निदेव ! हामीलाई मार्न खोज्ने दुष्टको संहार गर्न तिमी आफ्नो तेज बढाऊ।

**भरद्वाजाय सप्रथः शर्म यच्छ सहन्त्य। अग्ने वरेण्यं वसु॥३३॥**

हे अग्निदेव ! तिमी तेजस्वी छौ, भरद्वाजलाई सबै किसिमको यशस्वी निवास प्रदान गर र श्रेष्ठ धन देऊ।

**अग्निर्वृत्राणि जङ्घनद्द्रविणस्युर्विपन्यया। समिद्धः शुक्र आहुतः॥३४॥**

सत्प्रयासबाट प्रसन्न भएर याजकलाई प्रसन्नता प्रदान गर्ने हे प्रदीप्त अग्निदेव ! हामीलाई बन्धनमा राख्ने खालका दुष्ट प्रवृत्ति विनाश गर।

**गर्भे मातुः पितुष्पिता विदिद्युतानो अक्षरे। सीदन्नृतस्य योनिमा॥३५॥**

पृथ्वी माताका गर्भमा विशेष रूपले देदीप्यमान र अन्तरिक्षमा संरक्षकको भूमिका निर्वाह गर्न खटिएका अग्निदेव यज्ञवेदीमा विराजमान छन्।

**ब्रह्म प्रजावदा भर जातवेदो विचर्षणे। अग्ने यद्दीदयद्दिवि॥३६॥**

सबै जान्ने दिव्यद्रष्टा, हे अग्निदेव ! अन्तरिक्षलोकमा देवताहरूलाई प्राप्त सुख, ऐश्वर्य र सन्तान आदिबाट हामीलाई पनि प्रसन्न गराऊ।

**उप त्वा रण्वसन्दृशं प्रयस्वन्तः सहस्कृत। अग्ने ससृज्महे गिरः॥३७॥**

हे बलका पुत्र अग्निदेव ! तिमी रमणीय देखिन्छौ। हामी हविष्यान्न अर्पित गर्दै तिम्रो स्तुति गर्दछौं।

**उपच्छायामिव घृणेरगन्म शर्म ते वयम्। अग्ने हिरण्यऽसन्दृशः॥३८॥**

हे अग्निदेव तिमी स्वर्णिम आभायुक्त छौ। थाकेका प्राणीलाई छायामा प्राप्त भएजस्तै सुख हामीलाई तिम्रा नजिकमा हुन्छ।

**य उग्र इव शर्यहा तिग्मशृङ्गो न वंसगः। अग्ने पुरो रुरोजिथ॥३९॥**

हे अग्निदेव ! तिमी महान् योद्धाका बाण र साँढेका तिखा सिङ जस्तै ज्वालाले शत्रु संहार गर्दछौ। हे देव ! तिमीले नै असुरका तीन वटा सहर ध्वस्त गरेका थियौ।

**आ यं हस्ते न खादिनं शिशुं जातं न बिभ्रति। विशामग्निं स्वध्वरम्॥४०॥**

अध्वर्युहरू अग्निदेवलाई नवजात शिशुझैं हातमा धारण गर्दछन्। हे ऋत्विक्हरू हो ! तिमीहरू हिंसक पशुसित झैं सावधान भएर अग्निदेवलाई स्याहार गर।

**प्र देवं देववीतये भरता वसुवित्तमम्। आ स्वे योनौ नि षीदतु॥४१॥**

हे अध्वर्युहरू हो ! देवगणका निम्ति तेजस्वी एवं ऐश्वर्यवान् अग्निदेवलाई यज्ञवेदीमा स्थापित गरेर हव्य अर्पित गर।

**आ जातं जातवेदसि प्रियं शिशीतातिथिम्। स्योन आ गृहपतिम्॥४२॥**

हे अध्वर्युहरू हो ! अतिथिजस्तै पूज्य, ज्ञानी र सुखकर गृहपतिजस्ता अग्निदेवलाई यज्ञवेदीमा स्थापित गरेर उत्तम हवि अर्पित गर।

**अग्ने युक्ष्वा हि ये तवाश्वासो देव साधवः। अरं वहन्ति मन्यवे॥४३॥**

हे ज्योतिपुञ्ज अग्निदेव ! तिमीलाई यज्ञका निम्ति वहन गर्ने कुशल र श्रेष्ठ अश्व रथमा नियोजित गर।

**अच्छा नो याह्या वहाभि प्रयांसि वीतये। आ देवान्त्सोमपीतये॥४४॥**

हे अग्निदेव ! हवि ग्रहण गर्न र सोमपान गर्नका लागि हामीतिर फर्क र देवताहरूलाई पनि प्रकट गर।

**उदग्ने भारत द्युमदजस्रेण दविद्युतत्। शोचा वि भाह्यजर॥४५॥**

संसारको भरणपोषण गर्ने हे अग्निदेव ! तिमी उन्नत रूपमा प्रज्वलित होऊ। आफ्ना अक्षुण्ण तेजले प्रकाशित होऊ र जगत्मा प्रकाश फिंजाऊ।

**वीती यो देवं मर्तो दुवस्येदग्निमीळीताध्वरे हविष्मान्।**
**होतारं सत्ययजं रोदस्योरुत्तानहस्तो नमसा विवासेत्॥४६॥**

हव्य पदार्थले युक्त अग्निदेवलाई हवि अर्पित गरेर हामी इष्टदेवको यजन गर्दछौं। सत्यरूपी हविले यजन गर्न योग्य अग्निदेव द्युलोक तथा भूलोकका देवतालाई आह्वान गर्दछन्। याजकहरू ती अग्निदेवलाई हात उचालेर नमस्कारपूर्वक सेवा गरुन्।

आते अग्न ऋचा हविर्हृदा तष्टं भरामसि।
ते ते भवन्तूक्षण ऋषभासो वशा उत ॥४७॥

हे अग्निदेव ! हामी मन्त्रसहित संस्कारित हवि तिम्रा निम्ति हृदयदेखि नै अर्पित गर्दछौं। यो हवि तिमीलाई बलियो गोरु र गाईजस्तै होस्।

अग्निं देवासो अग्रियमिन्धते वृत्रहन्तमम्।
येना वसून्याभृता तृळहा रक्षांसि वाजिना ॥४८॥

अग्निदेव यज्ञका बाधक राक्षसलाई मार्ने र दुष्टको धन खोस्ने गर्दछन्। ती वृत्रसंहारक अग्निदेवलाई मेधावीहरू प्रज्वलित गर्दछन्।

[सूक्त – १७]

ऋषि – भारद्वाज बार्हस्पत्य। देवता – इन्द्र। छन्द – त्रिष्टुप् द्विपदा।

पिबा सोममभि यमुग्र तर्द ऊर्वं गव्यं महि गृणान इन्द्र।
वि यो धृष्णो वधिषो वज्रहस्त विश्वा वृत्रममित्रिया शवोभिः ॥१॥

हे पराक्रमी इन्द्रदेव ! तिमीले आफ्नै पराक्रमले शत्रु संहार गऱ्यौ। हे वज्रधारी ! तिमीले चोरिएका गाई खोज्यौ। अङ्गिराले तिम्रो स्तुति गरे र सोम अर्पण गरे। हे इन्द्रदेव ! तिमी सोमपान गर।

स ईं पाहि य ऋजीषी तरुत्रो यः शिप्रवान् वृषभो यो मतीनाम्।
यो गोत्रभिद्वज्रभृद्यो हरिष्ठाः स इन्द्र चित्राँ अभि तृन्धि वाजान् ॥२॥

हे इन्द्रदेव ! तिमी पहाड भत्काउने अश्वका संयोजक हौ। तिमी शत्रुबाट रक्षा गर्दछौ। हे सोमपान गर्ने देवता ! तिमी सोमपान गर र स्तुति गर्नेहरूलाई उत्तम धन प्रदान गर।

एवा पाहि प्रत्नथा मन्दतु त्वा श्रुधि ब्रह्म वावृधस्वोत गीर्भिः।
आविः सूर्यं कृणुहि पीपिहीषो जहि शत्रूँरभि गा इन्द्र तृन्धि ॥३॥

हे इन्द्रदेव ! स्तुति सुनेर हाम्रो उन्नति गराऊ र पहिलेकै जसरी सोमरसको पान गर। यस सोमले तिमीलाई पुष्ट गरोस्। सूर्यदेव प्रकट गराएर हामीलाई अन्न प्रदान गर। पणिले चोरेका गाई खोज र शत्रु नाश गर।

ते त्वा मदा बृहदिन्द्र स्वधाव इमे पीता उक्षयन्त द्युमन्तम्।
महामनूनं तवसं विभूतिं मत्सरासो जर्हृषन्त प्रसाहम् ॥४॥

हे इन्द्रदेव ! तिमी तेजस्वी र अन्नयुक्त छौ। सोमरस पान गरेर आनन्दित होऊ। तिमी अत्यन्त गुणवान् र महान् छौ, हाम्रा शत्रु नाश गर।

येभिः सूर्यमुषसं मन्दसानोऽवासयोऽप दृळहानि दर्द्रत्।
महामद्रिं परि गा इन्द्र सन्तं नुत्था अच्युतं सदसस्परि स्वात् ॥५॥

सोमरसले तृप्त भएका हे इन्द्रदेव ! तिमीले सूर्य र उषाद्वारा अन्धकार नाश गरायौ। अटेरी भएर छेकेर बस्ने पहाड भत्काएर पणिले चोरेका गाई तिमीले फेला पाऱ्यौ।

तव क्रत्वा तव तद्दंसनाभिरामासु पक्वं सच्या नि दीधः।
और्णोर्दुर उस्रियाभ्यो वि दृळहोदूर्वाद्गा असृजो अङ्गिरस्वान् ॥६॥

हे इन्द्रदेव ! तिमीले बुद्धिको कौशल, कर्मको कौशल र पराक्रमले गाई निस्कने मार्ग बनायौ। तिमीले नै ती गाईलाई दुधले युक्त बनायौ। अङ्गिराहरूका सहयोगले तिमीले नै गाईहरूलाई फुक्का गराएका थियौ।

पप्राथ क्षां महि दंसो व्युर्वीमुप द्यामृष्वो बृहदिन्द्र स्तभायः।
अधारयो रोदसी देवपुत्रे प्रत्ने मातरा यह्वी ऋतस्य ॥७॥

हे इन्द्रदेव ! तिमीले महान् कर्म गरेर पृथ्वीका विस्तृत क्षेत्रलाई अझ विस्तृत गरायौ। दिव्यलोक नखस्ने गरी अड्यायौ। देवताहरू जसका पुत्र हुन्, उनै द्यावापृथ्वीलाई तिमीले धारण गऱ्यौ।

अध त्वा विश्वे पुर इन्द्र देवा एकं तवसं दधिरे भराय।
अदेवो यदभ्यौहिष्ट देवान्त्स्वर्षाता वृणत इन्द्रमत्र ॥८॥

हे इन्द्रदेव ! तिमीले युद्धमा मरुत्हरूको सहायता गरेका थियौ। वृत्रासुरसित युद्ध हुँदा तिमी नै देवताहरूका नायक थियौ। तिमी महान् पराक्रमी छौ।

अध द्यौश्चित्ते अप सा नु वज्राद्द्वितानमद्भियसा स्वस्य मन्योः।
अहिं यदिन्द्रो अभ्योहसानं नि चिद्विश्वायुः शयथे जघान ॥९॥

सबै शक्तिहरूले इन्द्रदेवले सम्पन्न भए र वृत्रासुरलाई सुतेका आवस्थामा पूर्ण रूपले नष्ट गराए। त्यस बेला इन्द्रदेवको क्रोध र वज्रले युक्त पराक्रम देखेर द्युलोक पनि डरले स्तब्ध भएको थियो।

अध त्वष्टा ते मह उग्र वज्रं सहस्रभृष्टिं ववृतच्छताश्रिम्।
निकाममरमणसं येन नवन्तमहिं सं पिणगृजीषिन् ॥१०॥

हे सोमरस पिउने पराक्रमी इन्द्रदेव ! त्वष्टादेवले निर्माण गरेको सयौं जोर्नी र सहस्र धारले युक्त वज्रले नै तिमीले वृत्रासुरको संहार गर्‍यौ।

वर्धान्यं विश्वे मरुतः सजोषाः पचच्छतं महिषाँ इन्द्र तुभ्यम्।
पूषा विष्णुस्त्रीणि सरांसि धावन्वृत्रहणं मदिरमंशुमस्मै ॥११॥

हे इन्द्रदेव ! तिम्रो उन्नतिका लागि मरुत्हरू उत्तम स्तुति गर्दछन्। पूषादेव तिम्रा लागि बलवर्द्धक अन्न पकाउँछन् र विष्णुदेव तीन वटा पात्रमा वृत्रासुरलाई मार्ने शक्ति बढाउने सोमरस भर्दछन्।

आ क्षोदो वृतं नदीनां परिष्ठितमसृज ऊर्मिमपाम्।
तासामनु प्रवत इन्द्र पन्थां प्रार्दयो नीचीरपसः समुद्रम् ॥१२॥

हे इन्द्रदेव ! वृत्रासुरले जुनजुन नदी थुनेर राखेको थियो, तिनको पानी तिमीले बगायौ। समुद्रमा मिसिन जाने नदीका वेगवान् जलतरङ्गहरू स्वतन्त्र भए।

एवा ता विश्वा चकृवांसमिन्द्रं महामुग्रमजुर्यं सहोदाम्।
सुवीरं त्वा स्वायुधं सुवज्रमा ब्रह्म नव्यमवसे ववृत्यात् ॥१३॥

हे इन्द्रदेव ! तिमी चिरयुवा, बलशाली, ऐश्वर्यवान्, ओजस्वी, श्रेष्ठ कर्मका सम्पादक र वज्रधारी हौ। हाम्रा नवीन स्तोत्रले प्रसन्न भएर वर्द्धमान होऊ र हाम्रो रक्षा गर।

स नो वाजाय श्रवस इषे च राये धेहि द्युमत इन्द्र विप्रान्।
भरद्वाजे नृवत इन्द्र सूरीन्दिवि च स्मैधि पार्ये न इन्द्र ॥१४॥

हे इन्द्रदेव ! तिमी हाम्रा लागि अन्न, बल र धन धारण गर, जसले गर्दा हामीलाई अन्न, बल र धन प्राप्त होस्। हामीलाई सेवकले युक्त गराऊ। हामी ज्ञानी छौं, हामीलाई भविष्यमा पनि पुत्रपौत्रादिसहित सुखले सम्पन्न बनाऊ।

अया वाजं देवहितं सनेम मदेम शतहिमाः सुवीराः ॥१५॥

हे इन्द्रदेव ! हामी स्तोताहरूलाई अन्न आदिले युक्त गराऊ। हामी वीर पुत्रपौत्रले युक्त भएर सय वर्षको आयु र सुखमय जीवन निर्वाह गरौं।

## [सूक्त - १८]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप् द्विपदा।

तमु ष्टुहि यो अभिभूत्योजा वन्वन्नवातः पुरुहूत इन्द्रः।
अषाढमुग्रं सहमानमाभिर्गीर्भिर्वर्ध वृषभं चर्षणीनाम् ॥१॥

हे भरद्वाज ! तिमी शत्रुनाशक, तेजस्वी र बोलाइएका इन्द्रदेवलाई उत्तम स्तुति गर। जुन स्तुतिले इन्द्रदेव प्रसन्न हुँदा मानिसको इच्छा पूरा हुन्छ उनलाई त्यसैले हौस्याऊ।

स युध्मः सत्वा खजकृत्समद्वा तुविम्रक्षो नदनुमाँ ऋजीषी।
बृहद्रेणुश्च्यवनो मानुषीणामेकः कृष्टीनामभवत्सहावा ॥२॥

बलशाली, दानी, सोमरस पान गर्ने, सहयोगी र सधैं युद्ध गर्ने इन्द्रदेवले मानिसको रक्षा गर्दछन्।

त्वं ह नु त्यददमायो दस्यूँरेकः कृष्टीरवनोरार्याय।
अस्ति स्विन्नु वीर्यं१ तत्त इन्द्र न स्विदस्ति तदृतुथा वि वोचः ॥३॥

हे इन्द्रदेव ! तिमी याजकलाई पुत्र एवं सेवक प्रदान गर्दछौ। यज्ञ नगर्नेलाई जित। हे इन्द्रदेव ! बलको परिचय दिनका लागि कहिलेकाहीं आफ्नो पराक्रम प्रकट गर।

सदिद्धि ते तुविजातस्य मन्ये सहः सहिष्ठ तुरतस्तुरस्य।
उग्रमुग्रस्य तवसस्तवीयोऽरध्रस्य रध्रतुरो बभूव ॥४॥

हे इन्द्रदेव ! तिमी पराक्रमी, ओजस्वी, बलशाली, अजेय र शत्रुहन्ता हौ। तिमी अनेक यज्ञमा उपस्थित भएका छौ। तिमी हाम्रा शत्रु संहार गर।

तन्नः प्रत्नं सख्यमस्तु युष्मे इत्था वदद्भिर्वलमङ्गिरोभिः ।
हन्नच्युतच्युद्दस्मेषयन्तमृणोः पुरो वि दुरो अस्य विश्वाः ॥५॥

हे इन्द्रदेव ! तिमीले स्तुतिकर्ता अङ्गिराहरूको शत्रु बल नामका असुरलाई संहार गऱ्यौ र सहरका ढोका खोल्यौ। हे इन्द्रदेव ! हाम्रो मित्रभाव यसियो होस्।

स हि धीभिर्हव्यो अस्त्युग्र ईशानकृन्महति वृत्रतूर्ये ।
स तोकसाता तनये स वज्री वितन्तसाय्यो अभवत्समत्सु ॥६॥

स्तुति गर्नेहरू सामर्थ्य बढाउनका लागि इन्द्रदेवलाई स्तुतिले आह्वान गर्छन्। पुत्र प्राप्त गर्न उनलाई आह्वान गरिन्छ। वज्रधारी इन्द्रदेव रणभूमिमा नमस्कार गर्न योग्य छन्।

स मज्मना जनिम मानुषाणाममर्त्येन नाम्नाति प्र सर्स्रे ।
स द्युम्नेन स शवसोत राया स वीर्येण नृतमः समोकाः ॥७॥

इन्द्रदेव शत्रुको बल झुकाउने यश, धन, बल र वीर्यमा सर्वश्रेष्ठ छन्। मानिसहरूमा श्रेष्ठ, सर्वोत्तम पद र स्थान उनले प्राप्त गरुन्।

स यो न मुहे न मिथू जनो भूत्सुमन्तुनामा चुमुरिं धुनिं च ।
वृणक्पिप्रुं शम्बरं शुष्णमिन्द्रः पुरां च्यौत्नाय शयथाय नू चित् ॥८॥

व्यर्थका वस्तु उत्पन्न नगर्ने वीर इन्द्रदेव युद्धक्षेत्रमा सुमन्त नामका कुशल योद्धाका रूपमा प्रसिद्ध छन्। इन्द्रदेव त्यस्ता राक्षसहरूको संहार गर्न सधैँ तत्पर रहेर क्रियाशील हुन्छन्, जुन सर्वभक्षी, धन हरण गर्ने, जल थुन्ने र शोषण गर्ने खालका हुन्छन्।

उदावता त्वक्षसा पन्यसा च वृत्रहत्याय रथमिन्द्र तिष्ठ ।
धिष्व वज्रं हस्त आ दक्षिणत्राभि प्र मन्द पुरुदत्र मायाः ॥९॥

हे इन्द्रदेव ! तिमी उर्ध्व गति भएका छौ। रक्षक भएर शत्रु संहार गर्दछौ। तिमी शत्रुको संहार गर्नका लागि प्रशंसनीय बलयुक्त आफ्नो रथमा आरूढ हुन्छौ।

अग्निर्न शुष्कं वनमिन्द्र हेती रक्षो नि धक्ष्यशनिर्न भीमा ।
गम्भीरय ऋष्वया यो रुरोजाध्वानयद्दुरिता दम्भयच्च ॥१०॥

हे इन्द्रदेव ! अग्निले सुकेका वन भस्म गराएझैँ तिमी शत्रु संहार गर। गर्जन गर्दै दुष्टलाई छिन्नभिन्न गराउने हे इन्द्रदेव ! बिजुलीजस्ता वज्रले राक्षसलाई जलाऊ।

आ सहस्रं पथिभिरिन्द्र राया तुविद्युम्न तुविवाजेभिरर्वाक् ।
याहि सूनो सहसो यस्य नू चिददेव ईशे पुरुहूत योतोः ॥११॥

हे इन्द्रदेव ! असुरहरूले तिमीलाई बलहीन बनाउन सक्दैनन्। तिमीलाई अनेकौँले बोलाउँछन्। तिमी सहस्रौँ किसिमका मार्गबाट ऐश्वर्ययुक्त भएर हाम्रा सामु आऊ।

प्र तुविद्युम्नस्य स्थविरस्य घृष्वेर्दिवो ररप्शे महिमा पृथिव्याः ।
नास्य शत्रुर्न प्रतिमानमस्ति न प्रतिष्ठिः पुरुमायस्य सह्योः ॥१२॥

इन्द्रदेवको महिमा द्युलोक र भूलोकभन्दा पनि ठूलो छ। अति तेजोमय, धनवान् र श्रेष्ठ इन्द्रदेव शत्रुलाई नाश गर्दछन्। प्रज्ञावान्, शान्त, सुखदायक र पराक्रमी इन्द्रदेवको कुनै शत्रु छैन। यिनको बराबर पनि अर्को कोही छैन।

प्र तत्ते अद्या करणं कृतं भूत्कुत्सं यदायुमतिथिग्वमस्मै ।
पुरू सहस्रा नि शिशा अभि क्षामुत्तूर्वयाणं धृषता निनेथ ॥१३॥

हे इन्द्रदेव ! तिमीले वज्रद्वारा वध गरेका शम्बरको धेरै धन अतिथिग्वलाई दियौ। कुत्सलाई शुष्णबाट रक्षा गऱ्यौ र शत्रुबाट आयु र दिवोदासको रक्षा गऱ्यौ। युद्धभूमिमा तीव्रगामी दिवोदासलाई कष्टबाट सुरक्षित गरायौ।

अनु त्वाहिघ्ने अध देव देवा मदन्विश्वे कवितमं कवीनाम् ।
करो यत्र वरिवो बाधिताय दिवे जनाय तन्वे गृणानः ॥१४॥

हे प्रकाशमान इन्द्रदेव ! अहि असुरलाई मारेका हुनाले सबै देवताहरू आज पनि तिम्रै अनुकूल छन् र प्रसन्नतापूर्वक रहेका छन्। तिमी सर्वश्रेष्ठ ज्ञानी छौ। तिमी स्तोताबाट प्रसन्न भएर तेजस्वी यजमानलाई पुत्र र धन आदि दिएर सुखी बनाऊ।

अनु द्यावापृथिवी तत्त ओजोऽमर्त्या जिहत इन्द्र देवाः ।
कृष्वा कृत्नो अकृतं यत्ते अस्त्युक्थं नवीयो जनयस्व यज्ञैः ॥१५॥

हे इन्द्रदेव ! तिम्रा बलको देवताहरू र द्यावापृथिवीले अनुसरण गर्दछन्। हे कर्मवीर इन्द्रदेव ! तिमी नवीन यज्ञकर्म गर र नयाँ स्तोत्र प्रकट गर।

[सूक्त - १९]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

महाँ इन्द्रो नृवदा चर्षणिप्रा उत द्विबर्हा अमिनः सहोभिः ।
अस्मद्र्यग्वावृधे वीर्यायोरुः पृथुः सुकृतः कर्तृभिर्भूत् ॥१॥

स्तोता र प्रजाको पालन गर्ने हे महान् इन्द्रदेव ! तिमी हामीकहाँ आऊ। अनेकौं शक्तिका कारण दुवै लोकमा अहिंसित, पराक्रमी, वीरताका कार्य गरेर मनगे सामर्थ्य भएका इन्द्रदेव हाम्रा अगाडि आऊन्। विशाल शरीर र उत्तम गुणसम्पन्न इन्द्रदेव आफ्ना कर्म र सामर्थ्यका कारण नै पूजनीय छन्।

इन्द्रमेव धिषणा सातये धाद्बृहन्तमृष्वमजरं युवानम्।
अषाळ्हेन शवसा शूशुवांसं सद्यश्चिद्यो वावृधे असामि ॥२॥

प्रगतिशील, महान् दाता, अजर, चिरयुवा र असीमित बलशाली इन्द्रदेव तत्काल प्रवर्द्धमान हुन्छन्। उनै इन्द्रदेवलाई हाम्रा बुद्धिले स्वीकार गर्दछ।

पृथू करस्ना बहुला गभस्ती अस्मद्र्य१क्सं मिमीहि श्रवांसि।
यूथेव पश्वः पुशपा दमूना अस्माँ इन्द्राभ्या ववृत्स्वाजौ ॥३॥

हे शान्त मनका इन्द्रदेव ! उत्तम कर्ममा कुशल र धेरै दान गर्ने हात कल्याणका लागि हाम्रा सामु ल्याऊ। पशुपालन गर्नेले पशु सधाएझैं सङ्ग्राममा हामीलाई प्रेरित गर।

तं व इन्द्रं चतिनमस्य शाकैरिह नूनं वाजयन्तो हुवेम।
यथा चित्पूर्वे जरितार आसुरनेद्या अनवद्या अरिष्टाः ॥४॥

हामी अन्नका इच्छुक स्तोताहरू यस यज्ञस्थलमा सहायकका रूपमा रहेका मरुत्‌हरू र शत्रुहन्ता इन्द्रदेवलाई आह्वान गर्दछौं। हे इन्द्रदेव ! उहिलेका स्तोताहरू पापमुक्त, अनिन्द्य र अहिंसित स्थितिमा रहेझैं हामी पनि उस्तै रहौं।

धृतव्रतो धनदाः सोमवृद्धः स हि वामस्य वसुनः पुरुक्षुः ।
सं जग्मिरे पथ्या३ रायो अस्मिन्त्समुद्रे न सिन्धवो यादमानाः ॥५॥

स्तुतिकर्ताको अन्न र धन इन्द्रदेवका सामु नदीको पानी समुद्रमा खसेझैं पुग्दछ। इन्द्रदेव सोमपान गर्ने, ऐश्वर्यवान् र कर्मकुशल छन्।

शविष्ठं न आ भर शूर शव ओजिष्ठमोजो अभिभूत उग्रम्।
विश्वा द्युम्ना वृष्ण्या मानुषाणामस्मभ्यं दा हरिवोमादयध्यै ॥६॥

हे इन्द्रदेव ! तिमी शत्रु पराजित गर्दछौ। हामीलाई बल र तेज प्रदान गर। हामीलाई शक्ति, तेज र मानिसका लागि उपयुक्त हुने ऐश्वर्य प्रदान गर।

यस्ते मदः पृतनाषाळमृध्र इन्द्र तं न आ भर शूशुवांसम्।
येन तोकस्य तनयस्य सातौ मंसीमहि जिगीवांसस्त्वोताः ॥७॥

हे इन्द्रदेव ! शत्रु जित्न सक्ने बल हामीलाई प्रदान गर। तिमीले दिएका रक्षा साधनले हामी शत्रु जित्न सकौं। शत्रु जित्दा हामीलाई पुत्र प्राप्त भएजस्तै सुख प्राप्त होस्।

आ नो भर वृषणं शुष्ममिन्द्र धनस्पृतं शूशुवांसं सुदक्षम्।
येन वंसाम पृतनासु शत्रून्तवोतिभिरुत जामीँरजामीन् ॥८॥

हे इन्द्रदेव ! हामीलाई बल बढाउने र धन प्राप्त गर्ने कुशल पराक्रम प्रदान गर। तिम्रा सुरक्षाले सुरक्षित र बलिया भएर हामी युद्धस्थलमा शत्रु नाश गरौं।

आ ते शुष्मो वृषभ एतु पश्चादोत्तरादधरादा पुरस्तात्।
आ विश्वतो अभि समेत्वर्वाङिन्द्र द्युम्नं स्वर्वद्धेह्यस्मे ॥९॥

हे इन्द्रदेव ! हामीलाई पूर्व, पश्चिम, उत्तर र दक्षिण यी चारै तिरबाट सामर्थ्य बढाउने बल प्रदान गर। हे इन्द्रदेव हामीलाई तिमी सुखयुक्त धन प्रदान गर।

नृवत्त इन्द्र नृतमाभिरूती वंसीमहि वामं श्रोमतेभिः।
ईक्षे हि वस्व उभयस्य राजन्धा रत्नं महि स्थूरं बृहन्तम् ॥१०॥

हे इन्द्रदेव ! तिम्रा आश्रयमा हामी यशस्वी, प्रशंसनीय वीरले युक्त धन उपयोग गरौं। दुवै किसिमका धनका स्वामी हे इन्द्रदेव ! हामीलाई मनग्गे धन प्रदान गर।

मरुत्वन्तं वृषभं वावृधानमकवारिं दिव्यं शासमिन्द्रम्।
विश्वासाहमवसे नूतनायोग्रं सहोदामिह तं हुवेम ॥११॥

हामी याजकहरू यज्ञको रक्षा गर्न तत्काल इन्द्रदेवलाई आह्वान गर्दछौं। मरुत्हरूका सहयोगले इन्द्रदेव बलशाली, तेजस्वी, वर्द्धमान, शत्रुविजयी र दिव्य शासक हुन्छन्।

जनं वज्रिन्महि चिन्मन्यमानमेभ्यो नृभ्यो रन्धया येष्वस्मि।
अधा हि त्वा पृथिव्यां शूरसातौ हवामहे तनये गोष्वप्सु ॥१२॥

हे वज्रधारी इन्द्रदेव ! मानिसमध्येका मिथ्याभिमानीलाई आफ्ना नियन्त्रणमा राख। हामी सङ्ग्रामकालमा तथा पशु, पुत्र र जल प्राप्तिका निमित्त तिमीलाई आह्वान गर्दछौं।

वयं त एभिः पुरुहूत सख्यैः शत्रोः शत्रोरुत्तर इत्स्याम।
घ्नन्तो वृत्राण्युभयानि शूर राया मदेम बृहता त्वोताः ॥१३॥

हे पराक्रमी इन्द्रदेव ! तिम्रा आश्रयमा रहेर हामी धनऐश्वर्यले सम्पन्न र सुखी होऔं। हे इन्द्रदेव ! तिमी अनेकौंबाट बोलाइन्छौ। हामी स्तुतिजस्ता मित्रतापूर्ण कार्य सम्पादित गरेर तिम्रो सहायताले शत्रु नाश गरौं। हामी शत्रुहरूभन्दा बढी बलशाली बनौं।

[सूक्त - २०]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप् विराट्।

द्यौर्न य इन्द्राभि भूमार्यस्तस्थौ रयिः शवसा पृत्सु जनान्।
तं नः सहस्रभरमुर्वरासां दद्धि सूनो सहसो वृत्रतुरम् ॥१॥

हे सङ्घर्षका लागि विख्यात इन्द्रदेव ! हामीलाई तिमी सूर्यदेवको जस्तै कान्तियुक्त, शुत्रमाथि आक्रमण गर्ने, कसैले प्रतिकार गर्न नसक्ने, हजारौं किसिमका ऐश्वर्यले युक्त र भूमि उर्वर बनाउने खालको पुत्र प्रदान गर।

दिवो न तुभ्यमन्विन्द्र सत्रासुर्यं देवेभिर्धायि विश्वम्।
अहिं यद्वृत्रमपो वव्रिवांसं हन्नृजीषिन्विष्णुना सचानः ॥२॥

हे सोमपान गर्ने इन्द्रदेव ! तिमीले विष्णुदेवसित मिलेर जलअवरोधक वृत्र नामको असुर नाश गरेका थियौ। हे इन्द्रदेव ! स्तोताहरूले प्राणशक्ति र बल बढाउनका लागि तिमीलाई स्तोत्रको भेटी चढाएका थिए।

तूर्वन्नोजीयान्तवसस्तवीयान्कृतब्रह्मेन्द्रो वृद्धमहाः।
राजाभवन्मधुनः सोम्यस्य विश्वासां यत्पुरां दर्त्नुमावत् ॥३॥

इन्द्रदेवले पुरहरू नष्ट गर्ने वज्र फेला पारेकै बेला मधुर सोमरस प्राप्त गरे। सोमरसले इन्द्रदेव हिंसकहरूका हिंसक, पराक्रमी, अन्नदाता, ओजस्वी र तेजस्वी भए।

शतैरपद्रन्पणय इन्द्रात्र दशोणये कवयेऽर्कसातौ।
वधैः शुष्णस्याशुषस्य मायाः पित्वो नारिरेचीत्किं चन प्र ॥४॥

हे इन्द्रदेव तिम्रा सहायक, अन्नदाता कुत्स युद्धमा भयभीत भएर पणिका सेनाका डरले भागेका थिए। तिमीले शुष्णको आसुरी माया नष्ट गरेर त्यसको अन्न खोस्यौ।

महो द्रुहो अप विश्वायु धायि वज्रस्य यत्पतने पादि शुष्णः।
उरु ष सरथं सारथये करिन्द्रः कुत्साय सूर्यस्य सातौ ॥५॥

वज्रका प्रहारले शुष्ण मरेपछि दुष्ट शुष्णको सबै बल नष्ट भयो। त्यसपछि इन्द्रदेवले सूर्योपासनाका निम्ति सारथिका रूपमा रथमा चढ्न कुत्सलाई भने।

प्र श्येनो न मदिरमंशुमस्मै शिरो दासस्य नमुचेर्मथायन्।
प्रावन्नमीं साप्यं ससन्तं पृणग्राया समिषा सं स्वस्ति ॥६॥

श्येन पक्षीले ल्याएको सोम पिएर सन्तुष्ट भएका इन्द्रदेवले नुमचिको शिर काटे। उनले सुतेका साप्यको रक्षा गरेर उनलाई पशु, धन र अन्न प्रदान गरे।

वि पिप्रोरहिमायस्य दृळ्हाः पुरो वज्रिञ्छवसा न दर्दः।
सुदामन्तद्रेक्णो अप्रमृष्यमृजिश्वने दात्रं दाशुषे दाः ॥७॥

हे वज्रधारी ! तिमीले मायावी पिप्रुको किल्ला ध्वस्त गर्‍यौ। हे उत्तम दानदाता ! हवि र अन्न अर्पित गर्ने ऋजिश्वालाई तिमीले धन प्रदान गर्‍यौ।

स वेतसुं दशमायं दशोणिं तूतुजिमिन्द्रः स्वभिष्टिसुम्नः।
आ तुग्रं शश्वदिभं द्योतनाय मातुर्न सीमुप सृजा इयध्यै ॥८॥

आमाले छोरालाई आफूसित रहनका लागि विवश बनाएझैं इष्ट सुखदाता इन्द्रदेवले वेतसु आदि असुरलाई द्योतमानकहाँ गएर सधैं उनकै अधीनमा रहन विवश गराए।

स ईं स्पृधो वनते अप्रतीतो बिभ्रद्वज्रं वृत्रहणं गभस्तौ।
तिष्ठद्धरी अध्यस्तेव गर्ते वचोयुजा वहत इन्द्रमृष्वम् ॥९॥

शत्रुविनाशक, वज्र हातमा लिएका इन्द्रदेव जुध्न आउने शत्रुलाई विनाश गर्दछन्। उनी शूरवीर हुन् र रथमा चढ्दछन्। उनका अश्व वचनले मात्रै रथमा नारिन्छन् र सङ्केत मात्रै गर्नासाथ इन्द्रदेवलाई गन्तव्यसम्म लैजान्छन्।

सनेम तेऽवसा नव्य इन्द्र प्र पूरवः स्तवन्त एना यज्ञैः।
सप्त यत्पुरः शर्म शारदीर्दर्द्धन्दासीः पुरुकुत्साय शिक्षन् ॥१०॥

हे इन्द्रदेव ! हामी उपासकहरू तिमीबाट सुरक्षित भएर नयाँ धन प्राप्त गर्नका लागि उपासना गर्दछौं। यज्ञ गरेका बेला याजकहरू स्तुति गर्दछन्।

त्वं वृध इन्द्र पूर्व्यो भूर्वरिवस्यन्नुशने काव्याय।
परा नववास्त्वमनुदेयं महे पित्रे ददाथ स्वं नपातम् ॥११॥

हे इन्द्रदेव ! धन खोज्ने उशनाको कल्याण गर। तिमीले नववास्त्व नामको असुर संहार गरेका थियौ र शक्तिसम्पन्न उशनाका अगाडि देयपुत्रलाई उपस्थित गरायौ।

त्वं धुनिरिन्द्र धुनिमतीर्ऋणोरपः सीरा न स्रवन्तीः।
प्र यत्समुद्रमति शूर पर्षि पारया तुर्वशं यदुं स्वस्ति ॥१२॥

हे इन्द्रदेव ! तिमी शत्रुलाई भयभीत पार्छौ। रोकिएको जल प्रवाहित गर्छौ। हे पराक्रमी इन्द्रदेव ! तिमीले समुद्र पार गर्दा तुर्वश र यदुलाई कल्याणपूर्वक तारिदेऊ।

तव ह त्यदिन्द्र विश्वमाजौ सस्तो धुनीचुमुरी या ह सिष्वप्।
दीदयदित्तुभ्यं सोमेभिः सुन्वन्दभीतिरिध्मभृतिः पक्थ्यर्कैः ॥१३॥

हे इन्द्रदेव ! तिमीले धुनी र चुमुरी नामका असुर युद्धमा मारिदियौ। युद्धमा त्यति गर्नु तिम्रै सामर्थ्यलाई सम्भव थियो। तिम्रा लागि अन्न पकाइदिने, सोमरस बनाइदिने र समिधावान् दभीतिले हवि प्रदान गरेर तिम्रो सत्कार गरे।

[सूक्त - २१]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - इन्द्र विश्वेदेवा। **छन्द** - त्रिष्टुप्।

इमा उ त्वा पुरुतमस्य कारोर्हव्यं वीर हव्या हवन्ते।
धियो रथेष्ठामजरं नवीयो रयिर्विभूतिरीयते वचस्या ॥१॥

हे पराक्रमी इन्द्रदेव ! तिमी रथमा आरूढ, अजर र नौलो स्वरूपका छौ। तिमीलाई हवि प्राप्त हुन्छ। धेरै कार्य गर्न रुचाउने भरद्वाज उत्तम स्तुतिले तिमीलाई आह्वान गर्दछन्।

तमु स्तुष इन्द्रं यो विदानो गिर्वाहसं गीर्भिर्यज्ञवृद्धम्।
यस्य दिवमति मह्ना पृथिव्याः पुरुमायस्य रिरिचे महित्वम् ॥२॥

प्रज्ञावान् इन्द्रदेवको महिमा द्युलोक र पृथ्वीमा उस्तै महान् छ। उनी सर्वज्ञ भएर यज्ञबाट उन्नति गर्दछन्। स्तुतिबाट आह्वान गरिने इन्द्रदेवलाई हामी वन्दना गर्दछौं।

स इत्तमोऽवयुनं ततन्वत्सूर्येण वयुनवच्चकार।
कदा ते मर्ता अमृतस्य धामेयक्षन्तो न मिनन्ति स्वधावः ॥३॥

सूर्यदेवका प्रकाशले बाक्लो अन्धकार हटायो। हे स्वधारक शक्तियुक्त इन्द्रदेव ! तिम्रो अमर स्थानको कामना गर्ने मानिसहरू अमर रूपमा सुरक्षित हुन्छन्।

यस्ता चकार स कुह स्विदिन्द्रः कमा जनं चरति कासु विक्षु।
कस्ते यज्ञो मनसे शं वराय को अर्क इन्द्र कतमः स होता ॥४॥

वृत्र आदि असुर संहार गर्ने इन्द्रदेव अहिले कहाँ छन् ? कुन लोकमा र कुन प्रजाहरूका बीचमा उनी विचरण गर्दै छन् ? उनका लागि सुखदायी यज्ञ कुन हो ? उनलाई वरण गर्नका लागि समर्थ मन्त्र कुन हो ? कुन होताले उनलाई बोलाउन सक्दछन् ?

इदा हि ते वेविषतः पुराजाः प्रत्नास आसुः पुरुकृत्सखायः।
ये मध्यमास उत नूतनास उतावमस्य पुरुहूत बोधि ॥५॥

अनेकौं कर्म गर्ने र अनेकौंबाट बोलाइने हे इन्द्रदेव ! प्राचीन काल र वर्तमान कालमा उत्पन्न साधक तिम्रा मित्र बनेर रहून्। मध्य कालमा पनि तिम्रा स्तोताहरू उत्पन्न भए। तर हे इन्द्रदेव ! तिमी हाम्रो यस बेलाको स्तुति सुन।

तं पृच्छन्तोऽवरासः पराणि प्रत्ना त इन्द्र श्रुत्यानु येमुः।
अर्चामसि वीर ब्रह्मवाहो यादेव विद्म तात्त्वा महान्तम् ॥६॥

हे पराक्रमी इन्द्रदेव ! आजका मानिसहरू तिमीसित सोध्छन्, तिमीले पहिले गरेका उत्तम कार्यका विषयमा सुनेर त्यसको बयान गर्दछन्। जति हामीलाई थाहा छ, त्यसैका आधारमा हामी तिम्रो सत्कार गर्दछौं।

अभि त्वा पाजो रक्षसो वि तस्थे महि जज्ञानमभि तत्सु तिष्ठ।
तव प्रत्नेन युज्येन सख्या वज्रेण धृष्णो अप ता नुदस्व ॥७॥

हे शत्रुलाई सताउने इन्द्रदेव ! तिमी आफ्ना पुराना, सुयोग्य, सधैंका सहायक वज्रले शत्रुको सेना पर पुऱ्याऊ। हे इन्द्रदेव ! असुरको बल चारैतिर बढेको तिम्रै सामु छ। सबै शत्रुका बलको अनुमान लगाएर त्यसभन्दा बढी बलले तिनको प्रतिरोध गर।

स तु श्रुधीन्द्र नूतनस्य ब्रह्मण्यतो वीर कारुधायः।
त्वं ह्या३ पिः प्रदिवि पितॄणां शश्वद्बभूथ सुहव एष्टौ ॥८॥

हे इन्द्रदेव ! तिमी प्राचीन, श्रेष्ठ आह्वानकर्ता अङ्गिराका मित्र हौ। तिमी स्तोताहरूका पालक हौ। आजका स्तोता नयाँ स्तोत्रका इच्छुक छौं। तिमी हाम्रो प्रार्थना सुन।

प्रोतये वरुणं मित्रमिन्द्रं मरुतः कृष्वावसे नो अद्य।
प्र पूषणं विष्णुमग्निं पुरन्धिं सवितारमोषधीः पर्वतांश्च ॥९॥

हे भरद्वाज ! हामी सबैको रक्षा र इच्छापूर्तिका लागि वरुण, मित्र, इन्द्र, मरुत्, पूषा, विष्णु, अग्नि, सविता, औषधि र पर्वत आदि देवताको स्तुति गर।

इम उ त्वा पुरुशाक प्रयज्यो जरितारो अभ्यर्चन्त्यर्कैः।
श्रुधी हवमा हुवतो हुवानो न त्वावाँ अन्यो अमृत त्वदस्ति ॥१०॥

हे अति पराक्रमी इन्द्रदेव ! तिमीजस्तो अर्को कुनै देवता छैन। त्यसो हुनाले हामी स्तोताहरू उत्तम स्तोत्रले तिम्रो स्तुति गर्दछौं। तिमी हाम्रो स्तुति सुन।

नू म आ वाचमुप याहि विद्वान् विश्वेभिः सूनो सहसो यजत्रैः।
ये अग्निजिह्वा ऋतसाप आसुर्ये मनुं चक्रुरुपरं दसाय ॥११॥

हे बलका पुत्र इन्द्रदेव ! तिमी सर्वज्ञ छौ। जुन देवताहरू अग्निरूपी जिब्रो भएका सत्यका उपासक हुन् र जो यज्ञको आहुति ग्रहण गर्दछन्, शत्रुको नाश गर्नका निमित्त राजर्षि मनुले जसलाई सर्वोपरि स्थापित गरेका थिए, तिमीहरू उनैसित जाओ।

स नो बोधि पुरएता सुगेषूत दुर्गेषु पथिकृद्विदानः।
ये अश्रमास उरवो वहिष्ठास्तेभिर्न इन्द्राभि वक्षि वाजम् ॥१२॥

हे इन्द्रदेव ! तिमी मेधावी छौ। तिमी मार्ग नियन्ता हौ। त्यसैले सुगम र दुर्गम मार्गमा हाम्रो मार्गदर्शक बन। तिमी आफ्ना नथाक्ने र तीव्र गति भएका अश्वबाट हाम्रो बल बढाउनका लागि अन्न ल्याइदेऊ।

[सूक्त - २२]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**य एक इद्धव्यश्चर्षणीनामिन्द्रं तं गीर्भिरभ्यर्च आभिः।**
**यः पत्यते वृषभो वृष्ण्यावान्त्सत्यः सत्वा पुरुमायः सहस्वान् ॥१॥**

इन्द्रदेवलाई सङ्कटकालमा मानिसले आह्वान गर्दछन् र स्तुति गर्दा उनी आउँछन्। इच्छा पुऱ्याउने, पराक्रमी, ज्ञानी र सत्यवादी इन्द्रदेवलाई शत्रु विनाश गर्न हामी स्तुति गरौं।

**तमु नः पूर्वे पितरो नवग्वाः सप्त विप्रासो अभि वाजयन्तः।**
**नक्षद्दाभं ततुरिं पर्वतेष्ठामद्रोघवाचं मतिभिः शविष्ठम् ॥२॥**

अङ्गिरा आदि प्राचीन ऋषिले इन्द्रदेवलाई पराक्रमी र जोसिलो बनाउन नौ महिने यज्ञअनुष्ठान र स्तुति गरे। इन्द्रदेव सबैका शासक, तीव्रगामी र शत्रु संहारक हुन्।

**तमीमह इन्द्रमस्य रायः पुरुवीरस्य नृवतः पुरुक्षोः।**
**यो अस्कृधोयुरजरः स्वर्वान्तमा भर हरिवो मादयध्यै ॥३॥**

हे अश्वपति इन्द्रदेव ! हामी पुत्रपौत्रादि, स्वजन, सेवक, पशु र प्रसन्नप्रदायक धनको याचना तिमीसित गर्दछौं। हामीलाई तिमी सुखकारी ऐश्वर्य प्रदान गर्न यहाँ आऊ।

**तन्नो वि वोचो यदि ते पुरा चिज्जरितार आनशुः सुम्नमिन्द्र।**
**कस्ते भागः किं वयो दुध्र खिद्वः पुरुहूत पुरूवसोऽसुरघ्नः ॥४॥**

हे शत्रुजयी, पराक्रमी, अनेकौंबाट बोलाइने, ऐश्वर्यवान् इन्द्रदेव ! तिमी दुष्ट असुरको नाश गर्न समर्थ छौ। तिमीलाई यज्ञमा कस्तो भाग प्राप्त भयो ? हे इन्द्रदेव ! पहिलेका स्तोतालाई झैं सुख हामीलाई पनि सुख प्रदान गर।

**तं पृच्छन्ती वज्रहस्तं रथेष्ठामिन्द्रं वेपी वक्वरी यस्य नू गीः।**
**तुविग्राभं तुविकूर्मिं रभोदां गातुमिषे नक्षते तुम्रमच्छ ॥५॥**

हातमा वज्र लिने, रथमा चढेका, धेरै काम गर्ने, अनेक शत्रु हात समात्ने इन्द्रदेवको गुणगान गर्ने यजमानले यज्ञ कर्म र स्तुति गरेर शत्रु परास्त गरेको सुख पाउँछ।

**अया ह त्यं मायया वावृधानं मनोजुवा स्वतवः पर्वतेन।**
**अच्युता चिद्वीळिता स्वोजो रुजो वि दृळ्हा धृषता विरप्शिन् ॥६॥**

हे इन्द्रदेव ! तिमी आफ्नै बलले सम्पन्न छौ। अघि सर्दै आएका मायावी वृत्रासुरलाई तिमीले आफ्नै मनसमानको गति भएका वज्रले संहार गरेका छौ। हे तेजस्वी इन्द्रदेव ! तिमीले अचल, सुदृढ र शक्तिशाली पुरीहरू पनि नष्ट गरिदियौ।

**तं वो धिया नव्यस्या शविष्ठं प्रत्नं प्रत्नवत्परितंसयध्यै।**
**स नो वक्षदनिमानः सुवह्मेन्द्रो विश्वान्यति दुर्गहाणि ॥७॥**

हे इन्द्रदेव ! तिमी अति पुराना पराक्रमी हौ। उहिलेका ऋषिहरूझैं हामी नयाँ स्तोत्रले तिमीलाई प्रवर्द्धमान गर्दछौं। उनै शोभनीय इन्द्रदेवले हाम्रो रक्षा गरुन्।

**आ जनाय द्रुह्वणे पार्थिवानि दिव्यानि दीपयोऽन्तरिक्षा।**
**तपा वृषन्विश्वतः शोचिषा तान्ब्रह्मद्विषे शोचय क्षामपश्च ॥८॥**

हे इन्द्रदेव ! तिमी अभीष्ट वर्षा गराउने हौ। द्युलोक र अन्तरिक्षमा सर्वत्र व्याप्त भएर आफ्ना तीव्र तेजले सज्जनका शत्रु भस्म गराऊ।

**भुवो जनस्य दिव्यस्य राजा पार्थिवस्य जगतस्त्वेषसन्दृक्।**
**धिष्व वज्रं दक्षिण इन्द्र हस्ते विश्वा अजुर्य दयसे वि मायाः ॥९॥**

हे तेजस्वी, अजर इन्द्रदेव ! तिमी देवलोकवासी र पृथ्वीवासी सबैका राजा हौ। तिमी दाहिने हातमा वज्र धारण गरेर विश्वका मायावीहरूलाई नाश गर।

**आ संयतमिन्द्र णः स्वस्तिं शत्रुतूर्याय बृहतीममृध्राम्।**
**यया दासान्यार्याणि वृत्रा करो वज्रिन्त्सुतुका नाहुषाणि ॥१०॥**

हे वज्रधारी इन्द्रदेव ! शत्रुको संहार गर्नका लागि अक्षुण्ण, संयमित र कल्याणकारी धन प्रचुर मात्रामा प्रदान गर। त्यसबाट दास मानसिकतालाई श्रेष्ठ मार्ग देखाउन सकियोस् र मानिसको शत्रु नाश गर्न सकियोस्।

स नो नियुद्भिः पुरुहूत वेधो विश्ववाराभिरा गहि प्रयज्यो।
न या अदेवो वरते न देव आभिर्याहि तूयमा मद्र्यद्रिक् ॥११॥

हे इन्द्रदेव ! तिमी पूजनीय र अनेकौंबाट बोलाइने हौ। सबैले प्रशंसा गरेका घोडामा हामीकहाँ आऊ। देवता र असुरले रोक्न नसक्ने गति भएको घोडा लिएर आऊ।

[सूक्त – २३]

ऋषि – भारद्वाज बार्हस्पत्य। देवता – इन्द्र। छन्द – त्रिष्टुप्।

सुत इत्त्वं निमिश्ल इन्द्र सोमे स्तोमे ब्रह्मणि शस्यमान उक्थे।
यद्वा युक्ताभ्यां मघवन्हरिभ्यां बिभ्रद्वज्रं बाह्वोरिन्द्र यासि ॥१॥

हे इन्द्रदेव ! सोमरस निकाल्दा, स्तोत्र उत्तम भएको थाहा पाउँदा वा स्तुति सुनेपछि तिमी अश्व रथमा बाँध्दछौ। तिमी हातमा वज्र धारण गरेर आउँछौ।

यद्वा दिवि पार्ये सुष्विमिन्द्र वृत्रहत्येऽवसि शूरसातौ।
यद्वा दक्षस्य बिभ्युषो अबिभ्यदरन्धयः शर्धत इन्द्र दस्यून् ॥२॥

हे इन्द्रदेव ! डराएका यजमानका कर्मविरोधी असुर जित र युद्धक्षेत्रमा स्तोता याजकका सहयोगी होऊ। उनीहरूको रक्षा गर्दै उनीहरूलाई धैर्यवान् बनाऊ।

पाता सुतमिन्द्रो अस्तु सोमं प्रणेनीरुग्रो जरितारमूती।
कर्ता वीराय सुष्वय उ लोकं दाता वसु स्तुवते कीरये चित् ॥३॥

इन्द्रदेव सोमरस पिएपछि सोमरस तयार गर्नेलाई असल निवास प्रदान गर्दछन्। इन्द्रदेव स्तोतासित प्रसन्न हुँदै सहज मार्ग र धन प्रदान गर्दछन्।

गन्तेयान्ति सवना हरिभ्यां बभ्रिर्वज्रं पपिः सोमं ददिर्गाः।
कर्ता वीरं नर्यं सर्ववीरं श्रोता हवं गृणतः स्तोमवाहाः ॥४॥

इन्द्रदेव हातमा वज्र लिन्छन्। पेलेर तयार गरिएको सोमरस पान गर्दछन्। उनी दुई अश्व लिएर यज्ञका तीनै सवनमा पुग्दछन्। गाई दान गर्नेलाई पुत्र प्रदान गर्दछन् र स्तोताको स्तुति सुन्दछन्।

अस्मै वयं यद्वावान तद्विविष्म इन्द्राय यो नः प्रदिवो अपस्कः।
सुते सोमे स्तुमसि शंसदुक्थेन्द्राय ब्रह्म वर्धनं यथासत् ॥५॥

रक्षा गरुन् भनेर हामी इन्द्रदेवलाई प्रिय लाग्ने पुराना स्तोत्र गाउँछौं। सोमरस पेलेर तयार गरेपछि हामी इन्द्रदेवलाई स्तुति गर्दछौं। याजकहरू इन्द्रदेवलाई स्तुतिले खुसी पार्दै हवि प्रदान गरुन्।

ब्रह्माणि हि चकृषे वर्धनानि तावत्त इन्द्र मतिभिर्विविष्मः।
सुते सोमे सुतपाः शन्तमानि रान्द्र्या क्रियास्म वक्षणानि यज्ञैः ॥६॥

हे सोमपान गर्ने इन्द्रदेव ! तिम्रा लागि सोम तयार गरेपछि अब हामी हवि लिएर स्तुति गर्दछौं। तिम्रा निम्ति हामी स्तोत्र पनि मन लगाएर अर्पित गर्दछौं। स्तोत्रले इन्द्रदेवलाई उत्कर्ष दिलाउँछन्।

स नो बोधि पुरोडाशं रराणः पिबा तु सोमं गोऋजीकमिन्द्र।
एदं बर्हिर्यजमानस्य सीदोरुं कृधि त्वायत उ लोकम् ॥७॥

हे इन्द्रदेव ! तिमी खुसी भएर हामीले पठाएको पुरोडाश ग्रहण गर। गाईको दुध वा दही मिसिएको सोमरस पान गर। यजमानले ओछ्याएका आसनमा बस र तिम्रो अनुसरण गर्ने हाम्रो स्थान विस्तृत गराइदेऊ।

स मन्दस्वा ह्यनु जोषमुग्र प्र त्वा यज्ञास इमे अश्नुवन्तु।
प्रेमे हवासः पुरुहूतमस्मे आ त्वेयं धीरवस इन्द्र यम्याः ॥८॥

हे उग्र बलसम्पन्न इन्द्रदेव ! आफ्नै इच्छाअनुसार प्रसन्न भएर सोमरस पान गर। तिमी धेरै तिरबाट बोलाइएका छौ। हामीले गर्ने स्तुति तिमीसम्म पुगोस्। त्यसले प्रसन्न भएर हामीलाई रक्षा गर।

तं वः सखायः सं यथा सुतेषु सोमेभिरीं पृणता भोजमिन्द्रम्।
कुवित्तस्मा असति नो भराय न सुष्विमिन्द्रोऽवसेमृधाति ॥९॥

हे मित्रहरू हो ! सोमरस निचोरेर तयार गरिसकेपछि अन्नदाता इन्द्रदेवलाई सोमरसले सन्तुष्ट गराओ। इन्द्रदेवलाई सहायताका लागि प्रसन्न गराउने उपयुक्त साधन त्यही हो। इन्द्रदेवले हामीलाई पोषण गरुन् र हाम्रो सुरक्षा गरुन्।

एवेदिन्द्रः सुते अस्तावि सोमे भरद्वाजेषु क्षयदिन्मघोनः।
असद्यथा जरित्र उत सूरिरिन्द्रो रायो विश्ववारस्य दाता ॥१०॥

हवि र अन्नयुक्त यजमानका स्वामी इन्द्रदेव सोमरस तयार भएपछि प्रशंसाका लागि अत्यन्त योग्य धन प्रदान गर्दछन्। जसले स्तोतालाई ज्ञानसम्पन्न बनाउँछ, उनै इन्द्रदेवको स्तुति भरद्वाजहरूले गरेका छन्।

[सूक्त - २४]

ऋषि - भारद्वाज वार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

वृषा मद इन्द्रे श्लोक उक्था सचा सोमेषु सुतपा ऋजीषी।
अर्चत्र्यो मघवा नृभ्य उक्थैर्द्युक्षो राजा गिरामक्षितोतिः ॥१॥

सोमपान गरिसकेपछि खुसी भएका इन्द्रदेवको बल बढ्दछ। सोमपानका समयमा इन्द्रदेव प्रसन्न हुन्छन्। सोमपान गर्ने, धनवान् र तीव्रगामी इन्द्रदेवलाई मानिसले स्तुति र अर्चना गर्दछन्। द्युलोक निवासी स्तुतिका स्वामी इन्द्रदेव सधैं नै रक्षा गर्दछन्।

ततुरिर्वीरो नर्यो विचेताः श्रोता हवं गृणत उर्व्यूतिः।
वसुः शंसो नरां कारुधाया वाजी स्तुतो विदथे दाति वाजम् ॥२॥

ज्ञानी, बलशाली, शत्रुसंहारक, भक्तको प्रार्थना सुन्ने, असल निवास प्रदाता, स्तोताका संरक्षक, शिल्पकलाका सिपालुलाई पोषण दिने र यशस्वी अन्नदाता इन्द्रदेव प्रसन्न भएर हामीलाई अन्न प्रदान गरुन्।

अक्षो न चक्र्योः शूर बृहन्प्र ते मह्ना रिरिचे रोदस्योः।
वृक्षस्य नु ते पुरुहूत वया व्यू३तयो रुरुहुरिन्द्र पूर्वीः ॥३॥

हे इन्द्रदेव ! तिमी धेरै जनबाट बोलाइन्छौ। धुराले पाङ्ग्रो स्थिर भएझैं तिम्रा महिमाले द्युलोक र भूलोक स्थिर छन्। तिम्रो रक्षक शक्ति रुखका हाँगाहरूझैं मौलाउँछ।

शचीवतस्ते पुरुशाक शाका गवामिव स्रुतयः सञ्चरणीः।
वत्सानां न तन्तयस्त इन्द्र दामन्वन्तो अदामानः सुदामन् ॥४॥

हे शक्तिशाली इन्द्रदेव ! गोरेटो पहिल्याएर हिँड्ने गाईझैं तिम्रो शक्ति सर्वत्र कर्म गर्नका लागि समर्थ छन्। हे उत्तम दानदाता इन्द्रदेव ! तिम्रो शक्ति बाछो बाँध्ने डोरीझैं भएर अनेकौं शत्रुलाई बाँधिदिन्छ।

अन्यदद्य कर्वरमन्यदु श्वोऽसच्च सन्मुहुराचक्रिरिन्द्रः।
मित्रो नो अत्र वरुणश्च पूषार्यो वशस्य पर्येतास्ति ॥५॥

इन्द्रदेव प्रतिदिन उत्तरोत्तर नवीन र अद्भुत कार्य गर्दछन्। उनी सत् र असत्को विचार बारम्बार गर्दछन्। इन्द्र, वरुण, मित्र, पूषा र सवितादेवले हाम्रो इच्छा पूरा गराऊन्।

वि त्वदापो न पर्वतस्य पृष्ठादुक्थेभिरिन्द्रानयन्त यज्ञैः।
तं त्वाभिः सुष्टुतिभिर्वाजयन्त आजिं न जग्मुर्गिर्वाहो अश्वाः ॥६॥

हे इन्द्रदेव ! पर्वतको माथिल्लो भागबाट जल प्रवाहित भएझैं यज्ञकर्म र स्तुति गर्नाले मानिसलाई तिमीबाट मनोवाञ्छित फल प्राप्त हुन आउँछन्। हे स्तुतिले पूजा गरिने इन्द्रदेव ! युद्धक्षेत्रमा तीव्र गतिले अश्व गएझैं अन्न प्राप्तिको इच्छा भएका भरद्वाज आदि तिमीकहाँ आइपुग्दछन्।

न यं जरन्ति शरदो न मासा न द्याव इन्द्रमवकर्शयन्ति।
वृद्धस्य चिद्वर्धतामस्य तनूः स्तोमेभिरुक्थैश्च शस्यमाना ॥७॥

दिन, महिना र वर्षले नखिइने इन्द्रदेवको शरीर स्तुतिले पूजित भएर विकसित होस्।

न वीळवे नमते न स्थिराय न शर्धते दस्युजूताय स्तवान्।
अज्रा इन्द्रस्य गिरयश्चिदृष्वा गम्भीरे चिद्भवति गाधमस्मै ॥८॥

स्तुति गर्दाखेरि पनि इन्द्रदेव दस्युका वशमा पर्दैनन्। बलियो शरीर भएका इन्द्रदेव जब गमन गर्दछन्, त्यस बेला अग्ला पहाडहरू पनि सुगम बनिदिन्छन्। अगाध गहिरो ठाउँ पनि सजिलो हुन्छ।

गम्भीरेण न उरुणामत्रिन्प्रेषो यन्धि सुतपावन्वाजान्।
स्था ऊ षु ऊर्ध्व ऊती अरिषण्यन्नक्तोर्व्युष्टौ परितक्म्यायाम् ॥९॥

हे सोमपान गर्ने र पराक्रमी इन्द्रदेव ! तिमी गम्भीर र महान् हृदयले बल र अन्न प्रदान गर। हे इन्द्रदेव ! तिमी दिनरात तत्पर रहेर हाम्रो सुरक्षा गर।

सचस्व नायमवसे अभीक इतो वा तमिन्द्र पाहि रिषः।
अमा चैनमरण्ये पाहि रिषो मदेम शतहिमाः सुवीराः ॥१०॥

हे इन्द्रदेव ! तिमी नजिकै वा टाढा, यहाँ वा वहाँ, जतासुकै रहका भए पनि रणक्षेत्रमा, घरमा, जङ्गलमा स्तुति गर्नेहरूको रक्षा गर। हामीलाई वीर पुत्र आदि प्रदान गरेर सय वर्षको आयु प्रदान गर।

[सूक्त - २५]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

या त ऊतिरवमाया परमा या मध्यमेन्द्र शुष्मिन्नस्ति।
ताभिरू षु वृत्रहत्येऽवीर्न एभिश्च वाजैर्महान्न उग्र ॥१॥

हे बलशाली इन्द्रदेव ! तिमीसित सुरक्षाका लागि जुन उत्तम, मध्य कनिष्ठ साधनहरू छन्, ती सबैले सङ्ग्राममा हाम्रो रक्षा राम्ररी गर। तिमी स्वयं महान् भएर हामीलाई पनि महान् बनाऊ र अन्न प्रदान गर।

आभिः स्पृधो मिथतीररिषण्यन्नमित्रस्य व्यथया मन्युमिन्द्र।
आभिर्विश्वा अभियुजो विषूचीरार्याय विशोऽव तारीर्दासीः ॥२॥

हे इन्द्रदेव ! रक्षा साधनले शत्रुको संहार गर्दै हाम्रा सेनाको रक्षा गर र शत्रुका सेनाको रिस नष्ट गराऊ। यज्ञजस्ता असल काम गर्ने मानिसका शत्रु संहार गर।

इन्द्र जामय उत येऽजामयोऽर्वाचीनासो वनुषो युयुज्रे।
त्वमेषां विथुरा शवांसि जहि वृष्ण्यानि कृणुही पराचः ॥३॥

हे इन्द्रदेव ! अगाडि देखिएर, नजिकै वा टाढा रहेर हामीलाई मार्न खोज्दछन्, हाम्रा ती शत्रु संहार गर। आफ्ना बलले शत्रुको बल जित्दै हामीबाट टाढा पुऱ्याऊ।

शूरो वा शूरं वनते शरीरैस्तनूरुचा तरुषि यत्कृण्वैते।
तोके वा गोषु तनये यदप्सु वि क्रन्दसी उर्वरासु ब्रवैते ॥४॥

पुत्रपौत्रादि, गौ, जल र उर्वर भूमिका लागि परस्पर विवाद हुन्छ र युद्ध चल्छ। त्यस्ता युद्धमा तिम्रो कृपा पाउने योद्धा विजयी हुन्छ।

नहि त्वा शूरो न तुरो न धृष्णुर्न त्वा योधो मन्यमानो युयोध।
इन्द्र नकिष्ट्वा प्रत्यस्त्येषां विश्वा जातान्यभ्यसि तानि ॥५॥

आजसम्म जो जतिसुकै शक्तिशाली उत्पन्न भए पनि तिनलाई युद्धमा इन्द्रदेवले जितेकै छन्। कुनै मिचाहा, घमन्डी शूरवीरले अरू शत्रु नाश गरेकै भए पनि उनलाई जित्न सकेन। उनी सर्वश्रेष्ठ योद्धा हुन्।

स पत्यन्त उभयोर्नृम्णमयोर्यदी वेधसः समिथे हवन्ते।
वृत्रे वा महो नृवति क्षये वा व्यचस्वन्ता यदि वितन्तसैते ॥६॥

शत्रु जित्न, दास जित्न वा उत्तम घर जित्नका लागि युद्ध गर्ने दुई योद्धामध्ये जसका पक्षमा ऋत्विक्हरूले इन्द्रदेवका लागि आहुति प्रदान गरेर यज्ञ गर्दछन्, त्यसैले जित्छ।

अध स्मा ते चर्षणयो यदेजानिन्द्र त्रातोत भवा वरूता।
अस्माकासो ये नृतमासो अर्य इन्द्र सूरयो दधिरे पुरो नः ॥७॥

हे इन्द्रदेव ! आफ्ना भयभीत प्रजाको तिमी रक्षा गर। हे इन्द्रदेव ! तिमीलाई खोजिरहने उत्तम व्यक्तिलाई दुःखबाट रक्षा गर। हे देव ! जुन स्तोताले हामीलाई अग्रिम स्थान दिएका छन्, तिनीहरू सबैको रक्षा गर।

अनु ते दायि मह इन्द्रियाय सत्रा ते विश्वमनु वृत्रहत्ये।
अनु क्षत्रमनु सहो यजत्रेन्द्र देवेभिरनु ते नृषह्ये ॥८॥

हे इन्द्रदेव ! तिमी महान् वीर छौ। तिमीमा शत्रुनाशक सामर्थ्य सबै छन्। हे इन्द्रदेव ! देवताहरूले तिमीलाई उत्तम बल प्रदान गरेका छन्। त्यसै बलले संसारमा शत्रु पराजित गर्न सक्षम होऊ।

एवा नः स्पृधः समजा समत्स्विन्द्र रारन्धि मिथतीरदेवीः।
विद्याम वस्तोरवसा गृणन्तो भरद्वाजा उत त इन्द्र नूनम् ॥९॥

हे इन्द्रदेव ! त्यसै गरी शत्रुसेना नाश गर्ने प्रेरणा हाम्रा सेनालाई प्रदान गर र हाम्रो हित गर्नका लागि दुष्ट, हिंसक र आसुरी सेना नाश गर। हे इन्द्रदेव ! हामी स्तोताहरू अन्न र आवास प्राप्त गरौं।

[सूक्त - २६]

ऋषि - भरद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

श्रुधी न इन्द्र ह्वयामसि त्वा महो वाजस्य सातौ वावृषाणाः।
सं यद्विशोऽयन्त शूरसाता उग्रं नोऽवः पार्ये अहन्दाः ॥१॥

हे इन्द्रदेव ! हामी सेचन गर्दै मनग्गे अन्नको कामना गरेर तिमीलाई आह्वान गर्दछौं, हाम्रो प्रार्थना सबै सुन। वीर योद्धा सङ्ग्राम क्षेत्रमा गएका निर्णायक दिनमा तिनलाई संरक्षण र शक्ति प्रदान गर, त्यसो भएर शत्रु तर्सिऊन्।

त्वां वाजी हवते वाजिनेयो महो वाजस्य गध्यस्य सातौ।
त्वां वृत्रेष्विन्द्र सत्पतिं तरुत्रं त्वां चष्टे मुष्टिहा गोषु युध्यन् ॥२॥

हे इन्द्रदेव ! तिमी दुर्जनका नाशक र सज्जनका पोषक हौ। हे देव ! उत्तम अन्न प्राप्त गर्नका लागि अन्नवान् भरद्वाजहरू स्तुति गर्दै तिमीलाई आह्वान गर्दछन्। गाईका लागि युद्ध गर्दाखेरि तिम्रा कृपादृष्टिले उनीहरू मुड्कीले हानेरै शत्रु जित्दथे।

त्वं कविं चोदयोऽर्कसातौ त्वं कुत्साय शुष्णं दाशुषे वर्क्।
त्वं शिरो अमर्मणः पराहन्नतिथिग्वाय शंस्यं करिष्यन् ॥३॥

हे इन्द्रदेव ! अन्नको कामना गर्ने भार्गव ऋषिलाई तिमी प्रेरणा देऊ। तिमीले हविदाता कुत्सका लागि शुष्ण असुरलाई संहार गरेका थियौ र अतिथिग्वलाई सुख दिनका लागि आफूलाई अमर ठान्ने शम्बासुरको टाउको छिनायौ।

त्वं रथं प्र भरो योधमृष्वमावो युध्यन्तं वृषभं दशद्युम्।
त्वं तुग्रं वेतसवे सचाहन्त्वं तुजिं गृणन्तमिन्द्र तूतोः ॥४॥

हे इन्द्रदेव ! तिमीले राजा वृषभको सफलताका लागि गतिलो रथ दिएर, दस दिनसम्म भएका युद्धमा शत्रुबाट उनको रक्षा गरेका थियौ। वेतसको सहायता गर्दै तुग्रासुरलाई मारिदियौ। तुजी नामका राजाले स्तुति गर्दा उनको भलो गऱ्यौ।

त्वं तदुक्थामिन्द्र बर्हणा कः प्र यच्छता सहस्रा शूर दर्षि।
अव गिरेर्दासं शम्बरं हन्प्रावो दिवोदासं चित्राभिरूती ॥५॥

हे इन्द्रदेव तिमी शत्रुविनाशक वीर हौ। तिमीले शम्बर असुरका सयौं वा हजारौं सेना नष्ट गऱ्यौ। यज्ञको शत्रु शम्बासुरलाई मारेर दिवोदासको रक्षा गर्दै तिमीले ज्यादै प्रशंसनीय कार्य गऱ्यौ।

त्वं श्रद्धाभिर्मन्दसानः सोमैर्दभीतये चुमुरिमिन्द्र सिष्वप्।
त्वं रजिं पिठीनसे दशस्यन्षष्टिं सहस्रा शच्या सचाहन् ॥६॥

हे इन्द्रदेव ! श्रद्धासहित यज्ञको अनुष्ठान गरेर प्राप्त सोमपानले प्रसन्न भएका तिमीले राजा दभीतिको सुरक्षाका लागि चुमुरीलाई नाश गऱ्यौ। हे इन्द्रदेव ! तिमीले वीर पिठीनसलाई राज्य दिएर शत्रुका साठी हजार वीरलाई युद्धकलाले मारिदियौ।

अहं चन तत्सूरिभिरानश्यां तव ज्याय इन्द्र सुम्नमोजः।
त्वया यत्स्तवन्ते सधवीर वीरास्त्रिवरूथेन नहुषा शविष्ठ ॥७॥

हे पराक्रमी इन्द्रदेव ! तिमी शत्रुविजयी र त्रिलोकका रक्षक हौ। स्तोतारु सुख र सामर्थ्य प्राप्तिका लागि तिमीसित प्रार्थना गर्दछन्। हे इन्द्रदेव ! तिमीले प्रदान गरेको सुख र सामर्थ्य स्तोताहरूसँगै हाम्रो भरद्वाजले पनि प्राप्त गरौं।

वयं ते अस्यामिन्द्र द्युम्नहूतौ सखायः स्याम महिन प्रेष्ठाः।
प्रातर्दनिः क्षत्रश्रीरस्तु श्रेष्ठो घने वृत्राणां सनये धनानाम् ॥८॥

हे पूजनीय इन्द्रदेव ! हामी सखाभावले तिम्रो स्तुति गर्दछौं। धन प्राप्तिका लागि गरिने स्तुतिबाट हामी तिम्रा प्रियपात्र बनौं। प्रातर्दनका पुत्र क्षतश्रीलाई सर्वाधिक ऐश्वर्य प्रदान गर। उनी शत्रुलाई मारेर धन प्राप्त गरुन्।

### [सूक्त - २७]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**किमस्य मदे किम्वस्य पीताविन्द्रः किमस्य सख्ये चकार।**
**रणा वा ये निषदि किं ते अस्य पुरा विविद्रे किमु नूतनासः ॥१॥**

सोमले हर्षित इन्द्रदेवले के गरे ? सोमरस पान गरेर के गरे ? प्राचीन र नयाँ स्तुति गर्नेहरूले केके पाए ?

**सदस्य मदे सद्वस्य पीताविन्द्रः सदस्य सख्ये चकार।**
**रणा वा ये निषदि सत्ते अस्य पुरा विविद्रे सदु नूतनासः ॥२॥**

सोमपानले हर्षित भएका इन्द्रदेवले असल कर्म गरे। सोमपानपछि सत्कार्य गरे। त्यसका साथै मित्रता गर्दा पनि सत्कार्य नै गरे। प्राचीन र नवीन स्तुति गर्नेहरूले सत्कार्य नै प्राप्त गरे।

**नहि नु ते महिमनः समस्य न मघवन् मघवत्त्वस्य विद्म।**
**न राधसोराधसो नूतनस्येन्द्र नकिर्ददृश इन्द्रियं ते ॥३॥**

हे धनवान् इन्द्रदेव ! तिमीभन्दा ठूलो महिमाशाली कोही होला भन्ने हामी मान्दैनौं। तिम्रा सबै प्रशंसनीय सिद्धि र सामर्थ्यलाई पनि हामी जान्दैनौं।

**एतत्त्यत्त इन्द्रियमचेति येनावधीर्वरशिखस्य शेषः।**
**वज्रस्य यत्ते निहतस्य शुष्मात्स्वनाच्चिदिन्द्र परमो ददार ॥४॥**

हे इन्द्रदेव ! वरशिख नामका असुरको पुत्र संहार गर्ने तिम्रा पराक्रमलाई हामी जान्दैनौं र ? हे इन्द्रदेव ! उसै पराक्रमले प्रहार गर्नका लागि उचालेका वज्रका भयङ्कर ध्वनिले नै शत्रुहरू छरपस्ट भए र सुइंकुच्चा ठोके।

**वधीदिन्द्रो वरशिखस्य शेषोऽभ्यावर्तिने चायमानाय शिक्षन्।**
**वृचीवतो यद्धरियूपीयायां हन्पूर्वे अर्धे भियसापरो दर्त् ॥५॥**

इन्द्रदेवले चायमानका पुत्र अभ्यावर्तीलाई उपयुक्त शिक्षाको परामर्श दिएर वरशिख नामका असुरको पुत्र वध गरे। उनले हरियुपिया नगरका पूर्व भागमा वृचिवानलाई मारेपछि अरू सबै डरले जताततै छरिए।

**त्रिंशच्छतं वर्मिण इन्द्र साकं यव्यावत्यां पुरुहूत श्रवस्या।**
**वृचीवन्तः शरवे पत्यमानाः पात्रा भिन्दानान्यर्थान्यायन् ॥६॥**

हे धेरै तिरबाट बोलाइने इन्द्रदेव ! यश र अन्न प्राप्त गर्नका लागि तिमीसित युद्ध गर्ने, यज्ञका पात्रहरू नष्ट गर्ने र कवचधारी वरशिखका एक सय तीस पुत्र तिमीले युद्धमा एकै चोटि मारेका थियौ।

**यस्य गावावरुषा सूयवस्यू अन्तरू षु चरतो रेरिहाणा।**
**स सृञ्जयाय तुर्वशं परादाद्वृचीवतो दैववाताय शिक्षन् ॥७॥**

घाँस खोज्ने गाईझैं इन्द्रदेवका दुई कान्तिमान् अश्व अन्तरिक्षमा डुल्छन्। इन्द्रदेवले वृचिवानका पुत्र दैववातको प्रसन्नताका लागि तुर्वशलाई सृञ्जयका अधीनमा गराए।

**द्वयाँ अग्ने रथिनो विंशतिं गा वधूमतो मघवा मह्यं सम्राट्।**
**अभ्यावर्ती चायमानो ददाति दूणाशेयं दक्षिणा पार्थवानाम् ॥८॥**

हे अग्निदेव ! राजसूय यज्ञ गर्ने, धेरै दान दिने, चायमानका पुत्र अभ्यावर्तीले हामीलाई बीस वटा गाई र रथसँगै सेविका पनि प्रदान गरेका थिए। पृथुका वंशज अभ्यावर्ती राजाको यो दक्षिणा अविनाशी हुन्छ।

### [सूक्त - २८]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप् जगती।

**आ गावो अग्मन्नुत भद्रमक्रन्त्सीदन्तु गोष्ठे रणयन्त्वस्मे।**
**प्रजावतीः पुरुरूपा इह स्युरिन्द्राय पूर्वीरुषसो दुहानाः ॥१॥**

गाईले हाम्रा घरमा आएर कल्याण गरुन्। तिनले गोठमा बसेर हामीलाई खुसी पारुन्। अनेकौं रङ्गरूपका गाईले बाछोसहित उषा कालमा इन्द्रदेवताका निम्ति दुध दिऊन्।

इन्द्रो यज्वने पृणते च शिक्षत्युपेद्ददाति न स्वं मुषायति।
भूयोभूयो रयिमिदस्य वर्धयन्नभिन्ने खिल्ये नि दधाति देवयुम् ॥२॥

हे इन्द्रदेव ! याजक र स्तोताले इच्छा गरेको अन्नधन तिमी प्रदान गर्दछौ। उनीहरूको धन कहिल्यै हरण गर्दैनौ, बरु बढाइदिन्छौ। देवत्व प्राप्त गर्ने इच्छा भएकालाई अखण्डित एवं सुरक्षित निवास दिन्छौ।

न ता नशन्ति न दभाति तस्करो नासामामित्रो व्यथिरा दधर्षति।
देवाँश्च याभिर्यजते ददाति च ज्योगित्ताभिः सचते गोपतिः सह ॥३॥

गाईहरू कहिल्यै नष्ट हुँदैनन्, चोरडाकाले तिनलाई हानी गर्न सक्दैन। शत्रुका अस्त्रले गाईलाई क्षति गर्न सक्दैन। गाई पाल्नेले गाईबाट देवताको यजन गर्दछन् र गाईसँग उनीहरू चिरकालसम्म सुखी रहन्छन्।

न ता अर्वा रेणुककाटो अश्नुते न संस्कृतत्रमुप यन्ति ता अभि।
उरुगायमभयं तस्य ता अनु गावो मर्तस्य वि चरन्ति यज्वनः ॥४॥

धुलो उडाउने द्रुतगामी अश्वले पनि गाईलाई जित्न सक्दैन। हत्या गर्ने मनसायले गाईलाई आघात नगरून्। याजकका गाई द्रुवकसित विशाल क्षेत्रमा विचरण गरुन्।

गावो भगो गाव इन्द्रो मे अच्छान् गावः सोमस्य प्रथमस्य भक्षः।
इमा या गावः जनास इन्द्र इच्छामीद्धृदा मनसा चिदिन्द्रम् ॥५॥

गाईले हामीलाई धन दिऊन्। हे इन्द्रदेव ! हामीलाई तिमी गाई प्रदान गर। गाईको दुध पहिले सोमरसमा मिसाउँछौं। हे मानिसहरू हो ! गाई नै इन्द्रका रूप हुन्। इन्द्रदेवलाई हामी श्रद्धाका साथ प्राप्त गर्न खोज्दछौं।

यूयं गावो मेदयथा कृशं चिदश्रीरं चित्कृणुथा सुप्रतीकम्।
भद्रं गृहं कृणुथ भद्रवाचो बृहद्वो वय उच्यते सभासु ॥६॥

हे गाई हो ! तिमीहरूलाई हामी बलवान् बनाऔँ। हाम्रा रोगी र ख्याउटे जिउ स्वस्थ पारिदेओ। आफ्ना कल्याणकारी ध्वनिले हाम्रो घर पवित्र गर। यज्ञमण्डपमा तिमीबाट प्राप्त अन्नको नै यशोगान हुन्छ।

प्रजावतीः सूयवसं रिशन्तीः शुद्धा अपः सुप्रमाणे पिबन्तीः।
मा व स्तेन ईशत माघशंसः परि वो हेती रुद्रस्य वृज्याः ॥७॥

हे गाई हो ! बाछोसहितका भएर राम्रो र सफा घाँसपानी खाओ। तिमीहरूलाई पाल्ने चोर नहोस्। हिंसक पशुले तिमीहरूलाई दुःख नदिऊन्। परमेश्वरको कालरूपी अस्त्र तिमीहरूका नजिक नआओस्।

उपेदमुपपर्चनमासु गोषूप पृच्यताम्। उप ऋषभस्य रेतस्युपेन्द्र तव वीर्ये ॥८॥

हे इन्द्रदेव ! तिम्रा पराक्रमले बलशालीलाई ओज प्राप्त होस्। गाईसित उत्पादक र उत्प्रेरक शक्ति पनि होस्।

[सूक्त - २९]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

इन्द्रं वो नरः सख्याय सेपुर्महो यन्तः सुमतये चकानाः।
महोहि दाता वज्रहस्तो अस्ति महामु रण्वमवसे यजध्वम् ॥१॥

हे मानिस हो ! तिमीहरूका नेताको बुद्धि असल छ। उनीहरू स्तोत्र गाउँदै सखाभावले इन्द्रदेवको सेवा गर्दछन्। वज्रधारी इन्द्रदेव प्रशस्त धन प्रदान गर्दछन्। त्यसैले सुन्दर र महान् इन्द्रदेवको पूजा आफ्नो रक्षाका लागि गरौं।

आ यस्मिन्हस्तेनर्या मिमिक्षुरा रथे हिरण्यये रथेष्ठाः।
आ रश्मयो गभस्त्योः स्थूरयोराध्वन्नश्वासो वृषणो युजानाः ॥२॥

मानिसको हित गर्ने धन भएका, स्वर्णरथमा चढ्ने, बलिया हातमा घोडाको लगाम लिएका इन्द्रदेवलाई रथमा बाँधेका अश्वले ठिक बाटोमा लैजान्छन्। यस्ता इन्द्रदेवलाई हामी स्तुति गर्दछौं।

श्रिये ते पादा दुव आ मिमिक्षुर्धृष्णुर्वज्री शवसा दक्षिणावान्।
वसानो अत्कं सुरभिं दृशे कं स्व१र्ण नृतविषिरो बभूथ ॥३॥

हे इन्द्रदेव ! तिमी वज्र धारण गरेर शत्रु परास्त गर्दछौ। ऐश्वर्यको कामनाले हामी भरद्वाजहरू तिम्रा चरणमा सेवा अर्पित गर्दछौं। हे सुगन्धित आवरण भएका सर्वप्रधान इन्द्रदेव ! सबैका लागि दर्शनीय तिमी सूर्यदेवले झैं सबैको उत्साह बढाउँछौ।

स सोम आमिश्लतमः सुतो भूद्यस्मिन्पक्तिः पच्यते सन्ति धानाः।
इन्द्रं नरः स्तुवन्तो ब्रह्मकारा उक्था शंसन्तो देववाततमाः ॥४॥

यस बेला पकाउनुपर्ने पुरोडाश पकाइन्छ। लावा तयार गरिन्छ। ऋत्विक्हरू इन्द्रदेवको स्तुति गर्दछन्। सोमरस निकालेर त्यसमा दुध आदि असल पदार्थ मिसाइन्छ। यी सबै स्तुति गर्दै इन्द्रदेवका नजिकै पुग्दछन्।

न ते अन्तः शवसो धाय्यस्य वि तु बाबधे रोदसी महित्वा।
आ ता सूरिः पृणति तूतुजानो यूथेवाप्सु समीजमान ऊती ॥५॥

हे इन्द्रदेव ! तिम्रो बल अनन्त छ। द्यावापृथिवी तिम्रा बलले भयभीत भएर काँप्दछन्। गाई पाल्नेहरूले सन्तुष्ट गराएझैं हामी यज्ञमा स्तुति गरेर इन्द्रदेवलाई तृप्त गर्नका लागि उत्तम आहुति समर्पित गर्दछौं।

एवेदिन्द्रः सुहव ऋष्वो अस्तूती अनूती हिरिशिप्रः सत्वा।
एवा हि जातो असमात्योजाः पुरू च वृत्रा हनति नि दस्यून् ॥६॥

राम्रो नाक भएका र गतिलो मुकुट लगाएका महान् इन्द्रदेवलाई सुखपूर्वक बोलाउँछन्। उनी स्वयं आऊन् वा नआऊन्, स्तोताहरूलाई धन प्रदान गर्दछन्। पराक्रमी महावीर इन्द्रदेव अनुपम तेज र बलले वृत्रासुरजस्ता धेरै असुर र शत्रुको नाश गर्दछन्।

[सूक्त - ३०]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

भूय इद्वावृधे वीर्यायँ एको अजुर्यो दयते वसूनि।
प्र रिरिचे दिव इन्द्रः पृथिव्या अर्धमिदस्य प्रति रोदसी उभे ॥१॥

पराक्रम गर्ने वीर इन्द्रदेव पुनः प्रस्तुत छन्। महान् र अजर इन्द्रदेव धन प्रदान गर्दछन्। उनी द्यावापृथिवीभन्दा ठूला छन्। द्यावापृथिवी इन्द्रदेवको आधाजस्तै छन्।

अधा मन्ये बृहदसुर्यमस्य यानि दाधार नकिरा मिनाति।
दिवेदिवे सूर्यो दर्शतो भूद्वि सद्मान्युर्विया सुक्रतुर्धात् ॥२॥

इन्द्रदेवका बलको महत्त्व हामी मान्दछौं। इन्द्रदेव जुन कार्य गर्दछन्, त्यो कसैले पनि नष्ट गर्न सक्दैन। उत्तम कर्म गर्ने इन्द्रदेवले भुवनको विस्तार गरेका छन्। इन्द्रदेवका प्रभावले नै सूर्यदेव प्रतिदिन उदाउँछन्।

अद्या चिन्नू चित्तदपो नदीनां यदाभ्यो अरदो गातुमिन्द्र।
नि पर्वता अद्मसदो न सेदुस्त्वया दृळ्हानि सुक्रतो रजांसि ॥३॥

हे इन्द्रदेव ! तिमीले आज र पहिले पनि नदीको जल प्रवाहित हुने मार्ग निर्माण गरेका हौ। भोजन गर्न बसेको मानिस स्थिर भएझैं पर्वतलाई तिमीले स्थिर गरायौ। हे श्रेष्ठ कर्म गर्ने इन्द्रदेव ! तिमीले सबै लोकलाई बलियो बनायौ।

सत्यमित्तन्न त्वावाँ अन्यो अस्तीन्द्र देवो न मर्त्यो ज्यायान्।
अहन्नहिं परिशयानमर्णोऽवासृजो अपो अच्छा समुद्रम् ॥४॥

हे इन्द्रदेव ! तिमीजस्तो अर्को कुनै देवता छैन भन्ने कुरो सत्य हो। तिमीसरहको मानिस पनि छैन। मानिस र देवताहरूमा तिमीभन्दा ठूलो कोही पनि छैन। जल ओगटेर सुत्ने वृत्रासुरलाई तिमीले नाश गरेका थियौ र समुद्रतिर जल प्रवाहित गरेका थियौ।

त्वमपो वि दुरो विषूचीरिन्द्र दृळ्हमरुजः पर्वतस्य।
राजाभवो जगतश्चर्षणीनां साकं सूर्यं जनयन् द्यामुषासम् ॥५॥

हे इन्द्रदेव ! तिमीले चारै तिरबाट मार्ग खोलेर जल प्रवाहित गरायौ र मेघको बन्धन खोलिदियौ। सूर्य, उषा र स्वर्गलाई प्रकाशित गर्ने तिमी विश्वका स्वामी होऊ।

[सूक्त - ३१]

ऋषि - सुहोत्र भारद्वाज। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अभूरेको रयिपते रयीणामा हस्तयोरधिथा इन्द्र कृष्टीः।
वि तोके अप्सु तनये च सूरेऽवोचन्त चर्षणयो विवाचः ॥१॥

हे धनपति इन्द्रदेव ! तिमी सम्पूर्ण धनका स्वामी हौ। आफ्ना बाहुबलले प्रजालाई धारण गर्ने स्वयं तिमी नै हौ। शत्रु परास्त गर्न, पुत्रपौत्रादि प्राप्त गर्न र वर्षाका निमित्त मानिसहरू तिमीलाई स्तुति गर्दछन्।

त्वद्भियेन्द्र पार्थिवानि विश्वाच्युता चिच्च्यावयन्ते रजांसि।
द्यावाक्षामा पर्वतासो वनानि विश्वं दृळ्हं भयते अज्मन्ना ते ॥२॥

हे इन्द्रदेव ! अन्तरिक्षमा उत्पन्न मेघ जल खसाल्न योग्य नहुँदा पनि तिम्रा डरले जल बर्साउन लाग्दछन्। अन्तरिक्ष, भूलोक, पर्वत, वन र समस्त चराचर जगत् तिम्रा आगमनले भयभीत हुन्छन्।

त्वं कुत्सेनाभि शुष्णमिन्द्राशुषं युध्य कुयवं गविष्टौ।
दश प्रपित्वे अध सूर्यस्य मुषायश्चक्रमविवे रपांसि ॥३॥

हे इन्द्रदेव ! तिमीले त्यस बलवान्, उग्र वीर शुष्ण असुरलाई पराजित गर्‍यौ। गाई जोगाउनका लागि सङ्ग्राम गरेर कुयवलाई संहार गरेका थियौ। तिमीले सूर्यदेवका रथको पाङ्ग्रो हरण गर्‍यौ र पापी राक्षसको नाश गर्‍यौ।

त्वं शतान्यव शम्बरस्य पुरोजघन्थाप्रतीनि दस्योः। अशिक्षो यत्र
सच्या शचीवो दिवोदासाय सुन्वते सुतक्रे भरद्वाजाय गृणते वसूनि ॥४॥

हे बुद्धिमान् इन्द्रदेव ! तिमीले सोमरस अर्पित गर्ने दिवोदास र स्तोता भरद्वाजलाई प्रज्ञा र धन प्रदान गर्‍यौ। तिमीले शम्बर असुरका सय सहर ध्वस्त गर्‍यौ।

स सत्यसत्वन्महते रणाय रथमा तिष्ठ तुविनृम्ण भीमम्।
याहि प्रपथिन्नवसोप मद्रिक्प्र च श्रुत श्रावय चर्षणिभ्यः ॥५॥

हे अविनाशी सत्य बलका धनी इन्द्रदेव ! तिमी महायुद्धका लागि आफ्नो भयङ्कर रथमा चढ्यौ। हे सन्मार्गगामी इन्द्रदेव ! तिमी आफ्ना रक्षासाधनसहित नजिकै आएर हामीलाई यशस्वी बनाऊ।

[सूक्त - ३२]

ऋषि - सुहोत्र भारद्वाज। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अपूर्व्या पुरुतमान्यस्मै महे वीराय तवसे तुराय।
विरप्शिने वज्रिणे शन्तमानि वचांस्यासा स्थविराय तक्षम् ॥१॥

शत्रुनाशक, तीव्रगामी, वज्रधारी, स्तुतिका लागि योग्य, महान् इन्द्रदेवका लागि हामीले अपूर्व सुखदायी र विस्तृत स्तोत्र उच्चारण गर्‍यौं।

स मातरा सूर्येणा कवीनामवासयद्रुजदद्रिं गृणानः।
स्वाधीभिर्ऋक्वभिर्वावशान उदुस्त्रियाणामसृजन्निदानम् ॥२॥

इन्द्रदेव ज्ञानवान् मातापितारूपी द्यावापृथिवीको हितका लागि मेघ छिन्नभिन्न पारेर सूर्यको प्रकाश फिजाउँछन्। स्तुति गरिँदा मेघद्वारा किरणरूपी गाई मुक्त गराउँछन्।

स वह्निभिर्ऋक्वभिर्गोषु शश्वन्मितज्ञुभिः पुरुकृत्वा जिगाय।
पुरः पुरोहा सखिभिः सखीयन्दृळ्हा रुरोज कविभिः कविः सन् ॥३॥

गाई प्राप्त गराएर यज्ञकर्ता र स्तुति कर्ता ऋषिको सहयोग गर्दै धेरै काम गर्ने इन्द्रदेवले राक्षसलाई पराजित गरे। कविहरूसँगै शत्रुको सहर ध्वस्त गरे।

स नीव्याभिर्जरितारमच्छा महो वाजेभिर्महद्भिश्च शुष्मैः।
पुरुवीराभिर्वृषभ क्षितीनामा गिर्वणः सुविताय प्र याहि ॥४॥

स्तुतिद्वारा उपासना गर्न योग्य हे बलवान् इन्द्रदेव ! तिमी महान् अन्न र बलवान् भएर नवीन बल बढाउने सखाहरूका साथ सुख प्राप्तिका निमित्त आऊ।

स सर्गेण शवसा तक्तो अत्यैरप इन्द्रो दक्षिणतस्तुराषाट्।
इत्था सृजाना अनपावृदर्थं दिवेदिवे विविषुरप्रमृष्यम् ॥५॥

हिंसकलाई वशमा राख्ने इन्द्रदेव सधैं आफ्ना बलले निरन्तर गमनशील तेजस्वी घोडाले युक्त भएर जलराशिलाई क्षोभरहित समुद्रतर्फ प्रवाहित हुनका लागि प्रेरित गर्दछन्।

[सूक्त - ३३]

ऋषि - शुनहोत्र भारद्वाज। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**य ओजिष्ठ इन्द्र तं सु नो दा मदो वृषन्त्स्वभिष्टिर्दास्वान्।**
**सौवश्व्यं यो वनवत्स्वश्वो वृत्रा समत्सु सासहदमित्रान् ॥१॥**

हे बलवान् इन्द्रदेव । हामीलाई अति बलशाली, स्तुति गर्न, यज्ञ गर्ने र हव्य प्रदान गर्ने पुत्र देऊ। त्यसले घोडामा बसेर सुन्दर अश्वको विरुद्ध आचरण गर्ने शत्रुलाई जितोस्।

**त्वां हीऽन्द्रावसे विवाचो हवन्ते चर्षणयः शूरसातौ।**
**त्वं विप्रेभिर्वि पणीँरशायस्त्वोत इत्सनिता वाजमर्वा ॥२॥**

हे इन्द्रदेव ! विभिन्न किसिमले स्तुति गर्ने मानिस, सङ्ग्राममा रक्षाका लागि तिमीलाई बोलाउँछन्। तिमीले अङ्गिराहरूसँग मिलेर पणिलाई मारेका थियौ। तिम्रो उपासना गर्ने तिम्रो सुरक्षामा रहँदै अन्न प्राप्त गर्दछन्।

**त्वं ताँ इन्द्रोभयाँ अमित्रान्दासा वृत्राण्यार्या च शूर।**
**वधीर्वनेव सुधितेभिरत्कैरा पृत्सु दर्षि नृणां नृतम ॥३॥**

हे इन्द्रदेव ! दस्यु र आर्यहरू दुवै खालका शत्रुलाई तिमीले वृत्रासुरलाई झैं मारिदियौ। बन्चराले रुख काटेझैं तिमीले सङ्ग्राममा शत्रुलाई तीक्ष्ण आयुधले काटिदियौ।

**स त्वं न इन्द्राकवाभिरूती सखा विश्वायुरविता वृधे भूः।**
**स्वर्षाता यद्ध्वयामसि त्वा युध्यन्तो नेमधिता पृत्सु शूर ॥४॥**

हे इन्द्रदेव ! तिमी सर्वत्र गमनशील छौ। हामी धन प्राप्त गर्ने अभिलाषाले तिमीलाई आह्वान गर्दछौं। तिमी मित्रका रूपमा रहेर हामीलाई ऐश्वर्य प्रदान गर। हामी वीर पुरुषसँग सङ्ग्राम गर्दै रक्षा साधनका लागि तिमीलाई आह्वान गर्दछौं।

**नूनं न इन्द्रापराय च स्या भवा मृळीक उत नो अभिष्टौ।**
**इत्था गृणन्तो महिनस्य शर्मन्दिवि ष्याम पार्ये गोषतमाः ॥५॥**

हे इन्द्रदेव ! आज वा अरू जुनसुकै समयमा पनि तिमी हाम्रै होऊ। हामीकहाँ आएर हर समय हामीलाई तिमी सुख देऊ। गाईको सेवा गर्न चाहने र स्तुति गर्ने हामी याजकसित तिम्रो सम्बन्ध सुख र दुःखका दुवै स्थितिमा सम्बन्ध रहोस्।

[सूक्त - ३४]

ऋषि - शुनहोत्र भारद्वाज। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**सं च त्वे जग्मुर्गिर इन्द्र पूर्वीर्वि च त्वद्यन्ति विभ्वो मनीषाः।**
**पुरा नूनं च स्तुतय ऋषीणां पस्पृध्र इन्द्रे अध्युक्थार्का ॥१॥**

हे इन्द्रदेव ! प्राचीन कालमैं असङ्ख्य स्तोत्रले तिम्रो स्तुति गरियो। तिम्रा स्तोताहरूको प्रशंसा हुन्छ। ऋषिहरूका स्तुतिले मानौं एकापसमा प्रतिस्पर्धा गर्दछन्।

**पुरुहूतो यः पुरुगूर्त ऋभ्वाँ एकः पुरुप्रशस्तो अस्ति यज्ञैः।**
**रथो न महे शवसे युजानो३ऽस्माभिरिन्द्रो अनुमाद्यो भूत् ॥२॥**

इन्द्रदेव धेरै तिरबाट बोलाइने, धेरै तिरबाट प्रशंसित, अद्वितीय, महान् र यजमानद्वारा पूजित छन्। रथको जस्तो बल प्राप्त गर्नुपर्दा इन्द्रदेवकै स्तुति सबैले गर्दछन्।

**न यं हिंसन्ति धीतयो न वाणीरिन्द्रं नक्षन्तीदभि वर्धयन्तीः।**
**यदि स्तोतारः शतं यत्सहस्रं गृणन्ति गिर्वणसं शं तदस्मै ॥३॥**

इन्द्रदेवका कार्यमा, यज्ञकर्म र स्तोत्र आदि बाधक हुँदैनन्, तिनले इन्द्रदेवलाई वृद्धि गर्दछन्। स्तुतिद्वारा सेवा गर्न योग्य इन्द्रदेवलाई सयौं वा हजारौंले वन्दना गर्दछन्। इन्द्रदेवका लागि स्तोत्र सुखदायक हुन्छ।

**अस्मा एतद्दिव्य१र्चेव मासा मिमिक्ष इन्द्रे न्ययामि सोमः।**
**जनं न धन्वन्नभि सं यदापः सत्रा वावृधुर्हवनानि यज्ञैः ॥४॥**

यज्ञका समयमा इन्द्रदेवका लागि स्तोत्रजस्तै प्रिय अर्चनासहित मिश्रित सोमरस तयार गरिन्छ। मरुस्थलमा बगेका जलले मानिसलाई आनन्द दिएझैं हविसँग अर्पित स्तोत्रले इन्द्रदेवलाई आनन्दित गर्दछ।

अस्मा एतन्मह्याङ्गूषमस्मा इन्द्राय स्तोत्रं मतिभिरवाचि।
असद्यथा महति वृत्रतूर्य इन्द्रो विश्वायुरविता वृधश्च ॥५॥

सबैतिर पुग्ने इन्द्रदेव ठूला युद्धमा हामी सबैका रक्षक भएर जोस्याउँछन्। स्तोताहरू इन्द्रदेवका लागि नै आग्रहपूर्वक स्तोत्र उच्चारण गर्दछन्।

[सूक्त - ३५]

ऋषि - नर भारद्वाज। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

कदा भुवन्रथक्षयाणि ब्रह्म कदा स्तोत्रे सहस्रपोष्यं दाः।
कदा स्तोमं वासयोऽस्य राया कदा धियः करसि वाजरत्नाः ॥१॥

हे रथमा चढेका इन्द्रदेव ! हाम्रा स्तोत्र कहिले तिमीकहाँ पुग्ने योग्य होलान् ? कहिले तिमी कृपा गरेर सयौं मानिसलाई पोषण गर्ने पुत्र र धन दिन्छौ ? हाम्रा यज्ञकर्मलाई अन्नले रमणीय कहिले बनाउँछौ ?

कर्हि स्वित्तदिन्द्र यन्नृभिर्नॄन्वीरैर्वीरान्नीळयासे जयाजीन्।
त्रिधातु गा अधि जयासि गोष्विन्द्र द्युम्नं स्वर्वद्धेह्यस्मे ॥२॥

हे इन्द्रदेव ! तिमी हाम्रा वीर पुरुषसित शत्रुका वीर पुरुषलाई र हाम्रा वीर पुत्रबाट शत्रुका वीर पुत्रलाई सङ्ग्राममा कहिले भेट गराउँछौ ? तिमी भगुवा शत्रुका दुध, दही र घिउ दिने गाईहरू कहिले जित्दछौ ? हे इन्द्रदेव ! हामीलाई कहिले धन प्राप्ति गराउँछौ ?

कर्हि स्वित्तदिन्द्र यज्जरित्रे विश्वप्सु ब्रह्म कृणवः शविष्ठ।
कदा धियो न नियुतो युवासे कदा गोमघा हवनानि गच्छाः ॥३॥

हे इन्द्रदेव ! तिमी स्तोतालाई कहिले अनेकौं किसिमका अन्न प्रदान गर्दछौ ? तिमी स्तोतालाई कहिले गाई प्रदान गर्दछौ ? अनि कहिले हाम्रा कर्म र स्तुतिलाई आफूसित मिसाउँछौ ?

स गोमघा जरित्रे अश्वश्चन्द्रा वाजश्रवसो अधि धेहि पृक्षः।
पीपिहीषः सुदुघामिन्द्र धेनुं भरद्वाजेषु सुरुचो रुरुच्याः ॥४॥

हे इन्द्रदेव ! तिमी स्तुति गर्नेहरूलाई गाई, घोडा र बल प्रदान गर्न सक्ने प्रसिद्ध अन्न प्रदान गर। तिमी अन्नलाई सुन्दर दुध दिने गाईको जस्तै पुष्टि प्रदान गर। ती गाई र अन्न कान्तियुक्त होऊन्, तिमी यस्तै कृपा गर।

तमा नूनं वृजनमन्यथा चिच्छूरो यच्छक्र वि दुरो गृणीषे।
मा निररं शुक्रदुघस्य धेनोराङ्गिरसान्ब्रह्मणा विप्र जिन्व ॥५॥

हे इन्द्रदेव ! तिमी अत्यन्त पराक्रमी छौ। तिमी विभिन्न योजना बनाएर शत्रुको संहार गर। हे इन्द्रदेव ! तिमी असल पदार्थ प्रदान गर्ने हौ। हामी स्तोताहरू उत्तम स्तोत्र उच्चारण गर्दछौं। हे देव ! अङ्गिराहरूलाई अन्न प्रदान गर।

[सूक्त - ३६]

ऋषि - नर भारद्वाज। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

सत्रा मदासस्तव विश्वजन्याः सत्रा रायोऽध ये पार्थिवासः।
सत्रा वाजानामभवो विभक्ता यद्देवेषु धारयथा असुर्यम् ॥१॥

हे इन्द्रदेव ! सोम पिएर तिमीले हर्षित हुनु हाम्रा लागि खुसीको कुरो हो। देवताहरूमा तिमी सबैभन्दा बढी बलसम्पन्न छौ। तिमी अन्नदाता हौ। हे इन्द्रदेव ! पृथ्वीमा रहेका तिम्रा समस्त आदि धन वास्तवमा सबैका लागि हितकारी छन्।

अनु प्र येजे जन ओजो अस्य सत्रा दधिरे अनु वीर्याय।
स्यूमगृभे दुधयेऽर्वते च क्रतुं वृञ्जन्त्यपि वृत्रहत्ये ॥२॥

इन्द्रदेवको बलका कारण यजमानहरू सधैं उनको पूजा गर्दछन्। शत्रुमाथि आक्रमण गर्ने, पक्रने र उनीहरूलाई विनाश गर्ने इन्द्रदेव नै हुन्। शुभ कर्म गर्ने इन्द्रदेव वृत्रलाई मार्दछन्। त्यसैले याजकहरू इन्द्रदेवको सेवा गर्दछन्।

तं सध्रीचीरूतयो वृष्ण्यानि पौंस्यानि नियुतः सश्चुरिन्द्रम्।
समुद्रं न सिन्धव उक्थशुष्मा उरुव्यचसं गिर आ विशन्ति ॥३॥

बल र शौर्य पराक्रमयुक्त संरक्षक मरुत्गण र रथमा जोतिने घोडाले इन्द्रदेवको सेवा गर्दछन्। नदीहरू बग्दै समुद्रमा पुगेझैं सबै बलयुक्त स्तुति इन्द्रदेवकहाँ पुग्दछन्।

स रायस्खामुप सृजा गृणानः पुरुश्चन्द्रस्य त्वमिन्द्र वस्वः ।
पतिर्बभूथासमो जनानामेको विश्वस्य भुवनस्य राजा ॥४॥

हे इन्द्रदेव स्तुतिले प्रसन्न भएर तिमी धेरैलाई अन्न र घर प्रदान गर्दछौ। हामीलाई पनि अन्न प्रदान गर। तिमी सबै प्राणीमा श्रेष्ठ स्वामी हौ र सबै भुवनका अधिपति हौ।

स तु श्रुधि श्रुत्या यो दुवोयुर्द्यौर्न भूमाभि रायो अर्यः ।
असो यथा नः शवसा चकानो युगेयुगे वयसा चेकितानः ॥५॥

हे इन्द्रदेव ! तिमी हाम्रो असल र प्रशंसनीय स्तोत्र सुन। सूर्यदेवको जस्तै तिमी पनि हामीबाट पूजा पाउन इच्छुक छौ। शत्रु जितेर हाम्रा लागि पहिलेको हितकारी होऊ।

[सूक्त - ३७]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अर्वाग्रथं विश्ववारं त उग्रेन्द्र युक्तासो हरयो वहन्तु ।
कीरिश्चिद्धि त्वा हवते स्वर्वानृधीमहि सधमादस्ते अद्य ॥१॥

हे इन्द्रदेव ! तिम्रा रथमा जोतिएका घोडाहरू हामीकहाँ आऊन्। तिनीहरू विश्वले वन्दना गर्न योग्य रथ लिएर आऊन्। आत्मज्ञानी ऋषि तिम्रो स्तुति गर्दछन्। उनीहरू तिम्रा कृपाले आनन्द प्राप्त गर्दै सिद्ध पाउँछन्।

प्रो द्रोणे हरयः कर्माग्मन्पुनानास ऋज्यन्तो अभूवन् ।
इन्द्रो नो अस्य पूर्व्यः पपीयाद्द्युक्षो मदस्य सोम्यस्य राजा ॥२॥

हाम्रा यज्ञमा प्रवाहित हुने सोमरस, द्रोण कलशमा भर्ने गरिन्छ। आनन्दका स्वामी इन्द्रदेवले यो सोमको पान गरुन्।

आसस्राणासः शवसानमच्छेन्द्रं सुचक्रे रथ्यासो अश्वाः ।
अभि श्रव ऋज्यन्तो वहेयुर्नू चिन्नु वायोरमृतं वि दस्येत् ॥३॥

सर्वत्रगामी रथमा जोतिएका घोडाहरू छोटो मार्गमा जान्छन्। तिनीहरू सुन्दर रथमा बलशाली इन्द्रदेवलाई यज्ञमा ल्याऊन्। यो अमृत रस वायुले विकृत नगराऊन्।

वरिष्ठो अस्य दक्षिणामियर्तीन्द्रो मघोनां तुविकूर्मितमः ।
यया वज्रिवः परियास्यंहो मघा च धृष्णो दयसे वि सूरीन् ॥४॥

अति शीघ्र कर्म गर्ने इन्द्रदेव, हविदाता धनी यजमानलाई अझै धनी बनाउँछन्। हे वज्रधारी इन्द्रदेव ! तिमी पापनाशक भएर पापीलाई दण्डित गर्दछौ। यस्तो धन ज्ञानीहरूका लागि विशेष कल्याणकारी हुनेछ।

इन्द्रो वाजस्य स्थविरस्य दातेन्द्रो गीर्भिर्वर्धतां वृद्धमहाः ।
इन्द्रो वृत्रं हनिष्ठो अस्तु सत्वा ता सूरिः पृणति तूतुजानः ॥५॥

हाम्रा स्तुतिबाट हौसिएर इन्द्रदेवले उत्तम बल र अन्न प्रदान गरुन्। शत्रुसंहारक इन्द्रदेव शत्रु नाश गरेर हामीलाई चाँडै ती सबै धन दिऊन्।

[सूक्त - ३८]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अपादित उदु नश्चित्रतमो महीं भर्षद्द्युमतीमिन्द्रहूतिम् ।
पन्यसीं धीतिं दैव्यस्य यामञ्जनस्य रातिं वनते सुदानुः ॥१॥

आश्चर्यजनक इन्द्रदेव यस पात्रमा सोमरस पान गरुन्। महान् तेजस्वी इन्द्रदेवले आह्वान सुनुन्। याजकले सुबुद्धिपूर्वक गरेको दिव्य स्तुति दिएको आहुति ग्रहण गरुन्।

दूराच्चिदा वसतो अस्य कर्णा घोषादिन्द्रस्य तन्यति ब्रुवाणः ।
एयमेनं देवहूतिर्ववृत्यान्मद्र्यगिन्द्रमियमृच्यमाना ॥२॥

इन्द्रदेवका कान अति टाढाबाट गरेका आह्वान र स्तोत्र सुन्न सक्षम छन्। स्तोताहरू उच्च स्वरमा स्तुति गर्दछन्। स्तुतिले इन्द्रदेवलाई आकर्षित गरेर हामीकहाँ ल्याऊन्।

तं वो धिया परमया पुराजामजरमिन्द्रमभ्यनूष्यर्कैः ।
ब्रह्मा च गिरो दधिरे समस्मिन्महाँश्च स्तोमो अधि वर्धदिन्द्रे ॥३॥

हे अजर र पुरातन इन्द्रदेव ! हामी तिम्रो उपासना गर्दछौं। स्तुति र आहुति तिमीमा नै लीन हुने गर्दछन्। यी महान् यज्ञहरू पनि तिमीबाट बढ्ने गर्दछन्।

वर्धाद्यं यज्ञ उत सोम इन्द्रं वर्धाद्ब्रह्म गिर उक्था च मन्म।
वर्धाहैनमुषसो यामन्नक्तोर्वर्धान्मासाः शरदो द्याव इन्द्रम् ॥४॥

इन्द्रदेवलाई यज्ञ र सोमले बढाउँछन्। उनैलाई ज्ञान, स्तोत्र, प्रहर, उषा, रात्रि, दिवस, मास र संवत्सर आदिले पनि बढाउँछन्।

एवा जज्ञानं सहसे असामि वावृधानं राधसे च श्रुताय।
महामुग्रमवसे विप्र नूनमा विवासेम वृत्रतूर्येषु ॥५॥

हे अति महान् र बलवान् इन्द्रदेव ! धन, यश, सुरक्षा प्राप्त गरेर शत्रु पराजित गर्नका लागि हामी तिम्रो सेवा गरौं।

[सूक्त - ३९]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

मन्द्रस्य कवेर्दिव्यस्य वह्नेर्विप्रमन्मनो वचनस्य मध्वः।
अपा नस्तस्य सचनस्य देवेषो युवस्व गृणते गोअग्राः ॥१॥

हे इन्द्रदेव ! यो सोमरस फलदायक, हर्षित गराउने, दिव्य ज्ञान बढाउने र मधुर छ तिमी पान गर। हे देवताहरू हो ! तिमीहरू गाईको दुध आदि अन्न प्रदान गर।

अयमुशानः पर्यद्रिमुस्रा ऋतधीतिभिर्ऋतयुग्युजानः।
रुजदरुग्णं वि वलस्य सानुं पणींर्वचोभिरभि योधदिन्द्रः ॥२॥

इन्द्रदेवले गाईलाई मुक्त गर्नका लागि अङ्गिराहरूका सहयोगले पणिलाई पराजित गरे।

अयं द्योतयदद्युतो व्य१क्तून्दोषा वस्तोः शरद इन्दुरिन्द्र।
इमं केतुमदधुर्नू चिदह्नां शुचिजन्मन उषसश्चकार ॥३॥

हे इन्द्रदेव ! सोमरस दिनरात र वर्षा प्रकट गर्दछ। देवताहरूले सोमरसलाई दिन र समयको सूचकका रूपमा स्थापित गरेका छन्। सोमले उषालाई तेजस्वी बनाएको छ।

अयं रोचयदरुचो रुचानो३यं वासयद्व्यृ१ तेन पूर्वीः।
अयमीयत ऋतयुग्भिरश्वैः स्वर्विदा नाभिना चर्षणिप्राः ॥४॥

इन्द्रदेव याजकलाई वाञ्छित फल प्रदान गर्दछन्। इन्द्रदेवले अश्वसहितका रथमा धनयुक्त भएर यात्रा गरे। सूर्यदेवजस्तै तेजस्वी इन्द्रदेवले आफ्ना प्रकाशले अन्धकार, लोक र उषा प्रकट गरे।

नू गृणानो गृणते प्रत्न राजन्निषः पिन्व वसुदेयाय पूर्वीः।
अप ओषधीरविषा वनानि गा अर्वतो नॄनृचसे रिरीहि ॥५॥

हे इन्द्रदेव ! तिमी स्तोताबाट स्तुत्य भएपछि उत्तम धन र अन्न देऊ। उपासकलाई तिमी जल, अन्न, विषरहित वृक्ष, गाई, अश्व, बल र जनशक्ति प्रदान गर।

[सूक्त - ४०]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

इन्द्र पिब तुभ्यं सुतो मदायाव स्य हरी वि मुचा सखाया।
उत प्र गाय गण आ निषद्याथा यज्ञाय गृणते वयो धाः ॥१॥

हे इन्द्रदेव ! यो सोमरस तिम्रो आनन्दका लागि हो। तिमी मित्रजस्ता अश्व रथबाट खोल र हामी सबैलाई स्तुति गाउने प्रेरणा देऊ। स्तोतालाई अन्न प्रदान गर।

अस्य पिब यस्य जज्ञान इन्द्र मदाय क्रत्वे अपिबो विरप्शिन्।
तमु ते गावो नर आपो अद्रिरिन्दुं समह्यन्पीतये समस्मै ॥२॥

हे इन्द्रेव ! तिमीले उत्पन्न हुनासाथै हर्षित भएर वीरताका कार्य गर्नका लागि जसरी सोमरस पान गरेका थियौ, उसरी नै अहिले पनि पान गर। गाई, ऋत्विक, पहाडका ढुङ्गा, जल आदिका सहायताले यो सोमरस बनाइएको छ।

समिद्धे अग्नौ सुत इन्द्र सोम आ त्वा वहन्तु हरयो वहिष्ठाः।
त्वायता मनसा जोहवीमीन्द्रा याहि सुविताय महे नः ॥३॥

हे इन्द्रदेव ! अग्नि प्रदीप्त भएको छ र सोमरस तयार छ। रथमा बाँधेका घोडाले तिमीलाई यज्ञशालामा ल्याऊन्। हामी मन लगाएर तिमीलाई आह्वान गर्दछौं। तिमी आऊ र हाम्रो कल्याण गर।

**आ याहि शश्वदुशता ययाथेन्द्र महा मनसा सोमपेयम्।**
**उप ब्रह्माणि शृणव इमा नोऽथा ते यज्ञस्तन्वेऽ वयो धात्॥४॥**

हे इन्द्रदेव ! तिमी सोमरस पान गर्नका लागि बारम्बार आउने गर्दछौ। तिमी हाम्रा स्तुति सुनेर यज्ञमा आऊ। याजकहरू तिमीलाई पुष्ट गर्नका लागि सोम अर्पित गर्दछन्। तिमी सोम ग्रहण गर।

**यदिन्द्र दिवि पार्ये यदृधग्यद्वा स्वे सदने यत्र वासि।**
**अतो नो यज्ञमवसे नियुत्वान्त्सजोषाः पाहि गिर्वणो मरुद्भिः॥५॥**

हे इन्द्रदेव ! तिमीलाई हामी आह्वान गर्दछौं। टाढा रहेका द्युलोकमा होऊ अथवा घरमा वा अन्यत्र कहीं। जहां छौ, त्यहींबाट हाम्रो स्तुति सुनेर मरुत्‌हरूसँग आएर रक्षा गर।

[सूक्त - ४१]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

**अहेळमान उप याहि यज्ञं तुभ्यं पवन्त इन्दवः सुतासः।**
**गावो न वज्रिन्त्स्वमोको अच्छेन्द्रा गहि प्रथमो यज्ञियानाम्॥१॥**

हे इन्द्रदेव ! शान्त भएर हाम्रा यज्ञमा आऊ। यो सोमरस तिम्रै लागि हो। गोठमा गाई गएझैं यो सोमरस कलशमा जान्छ। यजनीय देवताहरूमा प्रमुख हे इन्द्रदेव ! तिमी हाम्रा नजिकै आऊ।

**या ते काकुत्सुकृता या वरिष्ठा यया शश्वत्पिबसि मध्व ऊर्मिम्।**
**तया पाहि प्र ते अध्वर्युरस्थात्सं ते वज्रो वर्ततामिन्द्र गव्युः॥२॥**

हे इन्द्रदेव ! तिमी उत्तम जिब्राले मधुर सोमरसको तरङ्ग सधैं नै ग्रहण गर्दछौ। त्यसैले सोमरस पान गरेर हाम्रो रक्षा गर। अध्वर्युहरूले तिमीलाई नजिकै उपस्थित गराउँछन्। गाईका रक्षक हे इन्द्रदेव ! तिमी वज्रले शत्रु संहार गर।

**एष द्रप्सो वृषभो विश्वरूप इन्द्राय वृष्णे समकारि सोमः।**
**एतं पिब हरिवः स्थातरुग्र यस्येशिषे प्रदिवि यस्ते अन्नम्॥३॥**

इन्द्रदेवका निम्ति तरल, बलवर्द्धक र सबै किसिमले अभीष्टवर्षक सोमरस तयार छ। हे पराक्रमी, युद्धजयी इन्द्रदेव ! तिमी सोमरसका स्वामी हौ, त्यो तिम्रो अन्न हो त्यसैले तिमी सोमरस पान गर।

**सुतः सोमो असुतादिन्द्र वस्यानयं श्रेयाञ्चिकितुषे रणाय।**
**एतं तितिर्व उप याहि यज्ञं तेन विश्वास्तविषीरा पृणस्व॥४॥**

हे इन्द्रदेव ! अशोधितभन्दा शोधित सोम उत्तम हुन्छ। यसले तिमीलाई आनन्द दिन्छ। तिमी सोमरसका नजिकै आऊ। हे शत्रु संहार गर्ने इन्द्रदेव ! तिमी यो पान गरेर समस्त बलको विकास गर।

**ह्वयामसि त्वेन्द्र याह्यर्वाङरं ते सोमस्तन्वे भवाति।**
**शतक्रतो मादयस्वा सुतेषु प्रास्माँ अव पृतनासु प्र विक्षु॥५॥**

हे इन्द्रदेव ! तिमीलाई हामी आह्वान गर्दछौं। यो सोमरस तिम्रा लागि पुष्टिकारक छ। तिमी यहाँ आऊ। तिमी यो सोमरस पान गरेर आनन्दित होऊ, सङ्ग्राममा हामीजस्ता प्रजाको रक्षा गर।

[सूक्त - ४२]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - इन्द्र। **छन्द** - अनुष्टुप् बृहती।

**प्रत्यस्मै पिपीषते विश्वानि विदुषे भर। अरङ्गमाय जग्मयेऽपश्चाद्दध्वने नरे॥**

हे ऋत्विक्‌हरू हो ! इन्द्रदेवका लागि सोमरस पठाओ। इन्द्रदेव सर्वत्र गमन गर्ने, सर्वज्ञ र यज्ञका प्रधान हुन्।

**एमेनं प्रत्येतन सोमेभिः सोमपातमम्।**
**अमत्रेभिर्ऋजीषिणमिन्द्रं सुतेभिरिन्दुभिः॥२॥**

हे ऋत्विक्‌हरू हो ! पात्रसहित संस्कारित, रसयुक्त, दीप्तिमान् सोमरस रुचिपूर्वक पान गर्ने यी इन्द्रदेवका नजिकै गएर प्रार्थना गर।

**यदी सुतेभिरिन्दुभिः सोमेभिः प्रतिभूषथ।**
**वेदा विश्वस्य मेधिरो धृषत्तन्तमिदेषते॥३॥**

हे ऋत्विक्‌हरू हो ! रसयुक्त, दीप्तिमान् सोम लिएर मनको रहर जान्ने इन्द्रदेवका शरणमा जाँदा उनले विघ्न हटाएर तिमीहरूका सबै इच्छा पूरा गराउनेछन्।

अस्माअस्मा इदन्धसोऽध्वर्यो प्र भरा सुतम्।
कवित्समस्य जेन्यस्य शर्धतोऽभिशस्तेरवस्परत् ॥४॥

हे अध्वर्युहरू हो ! इन्द्रदेवका लागि प्राणजस्तै सोमरस भरपूर मात्रमा प्रदान गर। इन्द्रदेव स्पर्धा योग्य र जित्न योग्य शत्रुलाई विनाश गरेर तिम्रो रक्षा गर्नेछन्।

[सूक्त - ४३]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्र। छन्द - उष्णिक्।

यस्य त्यच्छम्बरं मदे दिवोदासाय रन्धयः। अयं स सोम इन्द्र ते सुतः पिब ॥१॥

हे इन्द्रदेव ! सोमरस पिएर मदोन्मत्त भएका तिमीले दिवोदासको कल्याणका लागि शम्बासुरको वध गरेका थियौ। उही शोधित सोमरस तिमी पुनः पान गर।

यस्य तीव्रसुतं मदं मध्यमन्तं च रक्षसे। अयं स सोम इन्द्र ते सुतः पिब ॥२॥

हे इन्द्रदेव ! अति उत्साहवर्द्धक सोमरस प्रातः, मध्याह्न र सायं तीनै कालमा तयार हुन्छ, त्यो तिमी ग्रहण गर्दछौ। पेलेर तयार गरिएको यो सोमरस तिमी पान गर।

यस्य गा अन्तरश्मनो मदे दृढहा अवासृजः। अयं स सोम इन्द्र ते सुतः पिब ।३

हे इन्द्रदेव ! सोमरस पान गरेर तिमीले गाई मुक्त गरायौ, तयार गरिएको त्यसै यो सोमरस तिमी पान गर।

यस्य मन्दानो अन्धसो माघोनं दधिषे शवः। अयं स सोम इन्द्र ते सुतः पिब ॥

हे इन्द्रदेव ! तिमी अन्नरूपी सोमरस पिएर हर्षित हुन्छौ र विशिष्ट बलयुक्त हुन्छौ, त्यस्तै सोमरस तिमीले ग्रहण गर्नका लागि तयार छ।

[सूक्त - ४४]

ऋषि - शंयु बार्हस्पत्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप् अनुष्टुप्।

यो रयिवो रयिन्तमो यो द्युम्नैर्द्युम्नवत्तमः।
सोमः सुतः स इन्द्र तेऽस्ति स्वधापते मदः ॥१॥

हे शक्तिसम्पन्न इन्द्रदेव ! शोभायमान, अति देदीप्यमान उपासकलाई धन प्रदान गर्ने सोमरसले तिमीलाई आनन्द प्रदान गर्दछ।

यः शग्मस्तुविशग्म ते रायो दामा मतीनाम्।
सोमः सुतः स इन्द्र तेऽस्ति स्वधापते मदः ॥२॥

हे इन्द्रदेव ! तिमी बल बढाउने सोमका रक्षक हौ। तिमीलाई हर्ष प्रदान गर्ने सोमरसले स्तुति गर्नेलाई वैभव प्रदान गर्दछ।

येन वृद्धो न शवसा तुरो न स्वाभिरूतिभिः।
सोमः सुतः स इन्द्र तेऽस्ति स्वधापते मदः ॥३॥

हे इन्द्रदेव ! तिमी अन्नरूप सोमको रक्षा गर्दछौ। सोमरस पान गरेर तिमी मरुत्हरूका सहयोगले शत्रु संहार गर्दछौ। सोमरसले तिमीलाई आनन्दित गराउँछ।

त्यमु वो अप्रहणं गृणीषे शवसस्पतिम्।
इन्द्रं विश्वासाहं नरं मंहिष्ठं विश्वचर्षणिम् ॥४॥

यजमानहरूका हितकारी, कल्याणकारी बल र अन्नका अधिपति, शत्रुलाई पराजित गराउने, यज्ञका नायक, महान् दाता, सर्वज्ञ इन्द्रदेवलाई हामी स्तुति गर्दछौं।

यं वर्धयन्तीद्गिरः पतिं तुरस्य राधसः।
तमिन्न्वस्य रोदसी देवी शुष्मं सपर्यतः ॥५॥

हामीले गरेका स्तुतिले इन्द्रदेवको बल बढ्दछ। त्यसैबाट उनी शत्रु पराजित गरेर धन प्राप्त गर्दछन्। इन्द्रदेवका त्यस बलको प्रशंसा द्यावापृथिवीले पनि गरेका छन्।

तद्व उक्थस्य बर्हणेन्द्रायोपस्तृणीषणि।
विपो न यस्योतयो वि यद्रोहन्ति सक्षितः ॥६॥

हे स्तोतहरू हो ! इन्द्रदेवको स्तुतिका लागि स्तोत्र प्रसारित गर। बुद्धिमान्जस्ता र सामर्थ्ययुक्त इन्द्रदेव हाम्रा रक्षक हुन्।

**अविददक्षं मित्रो नवीयान्पपानो देवेभ्यो वस्यो अचैत्।**
**ससवान्स्तौलाभिर्धौतरीभिरुरुष्या पायुरभवत्सखिभ्यः ॥७॥**

यज्ञकर्म गर्नमा कुशल याजकलाई इन्द्रदेवले चिनेका छन्। सोमरस पान गर्ने इन्द्रदेव स्तुति गर्नेलाई उत्तम धन प्रदान गर्दछन्। द्यावापृथिवीलाई कम्पित गराउने अश्वसँग सखाभाव भएकाहरूलाई इन्द्रदेवले रक्षा गर्दछन्।

**ऋतस्य पथि वेधा अपायि श्रिये मनांसि देवासो अक्रन्।**
**दधानो नाम महो वचोभिर्वपुर्दृशये वेन्यो व्यावः ॥८॥**

ऋत्विक्हरू इन्द्रदेवलाई यज्ञमा पान गरिने सोमरसका लागि आह्वान गर्दछन्। विशाल शरीर भएका र शत्रु पराजित गर्ने इन्द्रदेव हामी स्तोताहरूको स्तोत्र सुनेर आऊन्।

**द्युमत्तमं दक्षं धेह्यस्मे सेधा जनानां पूर्वीररातीः।**
**वर्षीयो वयः कृणुहि शचीभिर्धनस्य सातावस्माँ अविड्ढि ॥९॥**

हे इन्द्रदेव ! हामीलाई तिमी तेज, बल र प्रचुर अन्न प्रदान गर। शत्रु भगाऊ र हाम्रो रक्षा गर। त्यसो भएपछि हामी धन र अन्नका साथमा सुखले रहन सकौं।

**इन्द्र तुभ्यमिन्मघवन्नभूम वयं दात्रे हरिवो मा वि वेनः।**
**नकिरापिर्ददृशे मर्त्यत्रा किमङ्ग रध्रचोदनं त्वाहुः ॥१०॥**

हे इन्द्रदेव ! हामीसित नरिसाऊ भनेर आहुति प्रदान गर्दछौँ। तिमीभन्दा गतिलो अर्को हाम्रो मित्र कोही पनि छैन। यस्तो महिमा नहुँदो हो त रत्नका प्रेरक भनेर तिमी चिनिने थिएनौ।

**मा जस्वने वृषभ नो ररीथा मा ते रेवतः सख्ये रिषाम।**
**पूर्वीष्ट इन्द्र निष्षिधो जनेषु जह्यसुष्वीन्प्र वृहापृणतः ॥११॥**

हे इन्द्रदेव ! तिमी महान् बलवान् छौ, हामीलाई हिंसक असुरबाट जोगाऊ। हामी तिम्रा मित्र बनेर रहौँ र दुःख नपाऔँ। तिम्रा लागि सोमरस तयार नगर्ने र हवि प्रदान नगर्ने बरु तिम्रा कार्यमा उत्पात मच्चाउने शत्रु हुन्, तिनलाई विनाश गर।

**उदभ्राणीव स्तनयन्नियर्तीन्द्रो राधांस्यश्व्यानि गव्या।**
**त्वमसि प्रदिवः कारुधाया मा त्वादामान आ दभन्मघोनः ॥१२॥**

मेघले गर्जन उत्पन्न गरेझैं इन्द्रदेव स्तुति कर्ताका लागि घोडा र गाई उत्पन्न गर्दछन्। धनवान्हरूले तिमीलाई दुःख नदिऊन्।

**अध्वर्यो वीर प्र महे सुतानामिन्द्राय भर स ह्यस्य राजा।**
**यः पूर्व्याभिरुत नूतनाभिर्गीर्भिर्वावृधे गृणतामृषीणाम् ॥१३॥**

हे ऋत्विक्हरू हो ! महत्त्वपूर्ण कर्म गर्ने इन्द्रदेवका लागि सोमरस तयार गर। इन्द्रदेव नै सोमका अधिपति हुन्। इन्द्रदेव पुरातन र नवीन स्तोत्रले वृद्धि प्राप्त गर्दछन्।

**अस्य मदे पुरु वर्पांसि विद्वानिन्द्रो वृत्राण्यप्रती जघान।**
**तमु प्र होषि मधुमन्तमस्मै सोमं वीराय शिप्रिणे पिबध्यै ॥१४॥**

सोमरस पान गरेर उत्साहित हुने ज्ञानी इन्द्रदेवले विपरीत योजना बनाउने शत्रुको संहार गरेका थिए। वीर इन्द्रदेवका लागि सोमरस प्रस्तुत गर। इन्द्रदेव सोमपान पान गर्छन् र कपटपूर्वक ढङ्गले छेकेर दुःख दिने शत्रु संहार गर्दछन्।

**पाता सुतमिन्द्रो अस्तु सोमं हन्ता वृत्रं वज्रेण मन्दसानः।**
**गन्ता यज्ञं परावतश्चिदच्छा वसुर्धीनामविता कारुधायाः ॥१५॥**

तयारी सोमरस पान गरेपछि रक्षक बनेर निवास प्रदान गर्ने इन्द्रदेव वज्रद्वारा वृत्रासुर वध गरुन्। इन्द्रदेव टाढै भए पनि यस यज्ञमा आऊन्।

**इदं त्यत्पात्रमिन्द्रपानमिन्द्रस्य प्रियममृतमपायि।**
**मत्सद्यथा सौमनसाय देवं व्य१स्मद्द्वेषो युयवद्व्यंहः ॥१६॥**

सोमरस इन्द्रदेवका लागि अति प्रिय पेय पदार्थ हो। उनी योग्य पात्र हुनाले सोमपान गरेर प्रसन्न र हर्षित होऊन्। उनका कृपाले शत्रु र पाप हामीदेखि टाढा पुगून्।

एना मन्दानो जहि शूर शत्रूञ्जामिमजामिं मघवन्नमित्रान्।
अभिषेणाँ अभ्या३ देदिशानान्पराच इन्द्र प्र मृणा जही च ॥१७॥

हे शूरवीर इन्द्रदेव ! सोमरस पान गरेर हाम्रा विरोधी शत्रु र तिनका आयुध विनाश गर। तिनलाई पराजित गराएर हामीभन्दा पर पुऱ्याऊ।

आसु ष्मा णो मघवन्निन्द्र पृत्स्व१ स्मभ्यं महि वरिवः सुगं कः।
अपां तोकस्य तनयस्य जेष इन्द्र सूरीन्कृणुहि स्मा नोअर्धम् ॥१८॥

हे इन्द्रदेव ! तिमी धनवान् छौ। सङ्ग्राममा हामीलाई सुखदायी धेरै धन प्राप्त गराऊ। विजय प्राप्तिका लागि योग्य सामर्थ्य प्रदान गर र पुत्रपौत्र एवं जलको वर्षाले हामीलाई समृद्ध बनाऊ।

आ त्वा हरयो वृषणो युजाना वृषरथासो वृषरश्मयोऽत्याः।
अस्मत्राञ्चो वृषणो वज्रवाहो वृष्णे मदाय सुयुजो वहन्तु ॥१९॥

हे इन्द्रदेव ! तिम्रा अश्व बलवान्, कामना पूर्ति गर्नमा सहायक, रथमा स्वयं नियुक्त हुने, प्रचुर वेगवान्, वज्रजस्तै तीक्ष्ण र भार बोक्न समर्थ छन्। सोमपान गरेर खुसी हुनका लागि तिनले तिमीलाई यस यज्ञमा ल्याऊन्।

आ ते वृषन्वृषणो द्रोणमस्थुर्घृतप्रुषो नोर्मयो मदन्तः।
इन्द्र प्र तुभ्यं वृषभिः सुतानां वृष्णे भरन्ति वृषभाय सोमम् ॥२०॥

हे कामना पूर्ति गराउने इन्द्रदेव ! समुद्रको लहरझैं आनन्दित गराउने सोमरस तिम्रा पात्रमा छ। ऋत्विक्हरू तिम्रा लागि पेलेर तयार गरेको सोमरस प्रदान गर्दछन्।

वृषासि दिवो वृषभः पृथिव्या वृषा सिन्धूनां वृषभः स्तियानाम्।
वृष्णे त इन्दुर्वृषभ पीपाय स्वादू रसो मधुपेयो वराय ॥२१॥

हे इन्द्रदेव ! यो मधुर, सरस सोम तिम्रा लागि तयार छ। तिमी नदीमा जल प्रवाहित गर्छौ र प्राणीलाई अभीष्ट प्राप्तिका लागि बलवान् बनाउँछौ।

अयं देवः सहसा जायमान इन्द्रेण युजा पणिमस्तभायत्।
अयं स्वस्य पितुरायुधानीन्दुरमुष्णादशिवस्य मायाः ॥२२॥

इन्द्रदेवसित युक्त भएकाले सोमरसले पणि भन्ने असुरको बल रोक्यो। सोमले नै धनपालकको अहितकारी आयुध र छलकपट नष्ट गऱ्यो।

अयमकृणोदुषसः सुपत्नीरयं सूर्ये अदधाज्ज्योतिरन्तः।
अयं त्रिधातु दिवि रोचनेषु त्रितेषु विन्ददमृतं निगूळहम् ॥२३॥

सोमले उषा काललाई सूर्यसित सम्बन्धित गरायो। यसैले सूर्यदेवलाई तेजस्वी बनायो। तीन किसिमका यस सोमले तेस्रो स्थानमा लुकेको अमृत प्राप्त गऱ्यो।

अयं द्यावापृथिवी वि ष्कभायदयं रथमयुनक्सप्तरश्मिम्।
अयं गोषु शच्या पक्वमन्तः सोमो दाधार दशयन्त्रमुत्सम् ॥२४॥

सोमले द्यावापृथिवीलाई स्थिर गराएको हो। यसैले सूर्यदेवका रथमा सात किरण स्थापित गरायो। यसैले गाईमा परिपक्व दुध स्थापित गरेको छ। यसै सोमले दुधलाई शक्तिले भरपूर गरेको छ। यसैले दस इन्द्रिययुक्त शरीरलाई पुष्ट गर्दछ।

[सूक्त - ४५]

ऋषि - शंयु बार्हस्पत्य। देवता - इन्द्र। छन्द - गायत्री अनुष्टुप्।

य आनयत्परावतः सुनीती तुर्वशं यदुम्। इन्द्रः स नो युवा सखा ॥१॥

शत्रुग्राट निकै पर पर्याँकिएका तुर्वश र यदुलाई उत्तम नीतिले जसले फिर्ता ल्याएका थिए, ती इन्द्रदेव हाम्रा मित्र हुन्।

अविप्रे चिद्वयो दधदनाशुना चिदर्वता। इन्द्रो जेता हितं धनम् ॥२॥

इन्द्रदेव अज्ञानीलाई अन्न प्रदान गर्दछन्। बिस्तारै हिँड्ने अश्वले पनि शत्रु परास्त गरेर तिनको धन इन्द्रदेव हरण गर्दछन्।

महीरस्य प्रणीतयः पूर्वीरुत प्रशस्तयः। नास्य क्षीयन्त ऊतयः ॥३॥

इन्द्रदेवको सञ्चालक शक्ति अनेकौं किसिमको छ। इन्द्रदेवको स्तुति पनि अनेकौं खालकै छ। उनको रक्षा गर्ने शक्ति कमजोर कहिल्यै हुँदैन।

सखायो ब्रह्मवाहसेऽर्चत प्र च गायत। स हि नः प्रमतिर्मही ॥४॥
हे मित्रहरू हो ! इन्द्रदेवलाई प्रार्थना गर, उनलाई पूजा गर। इन्द्रदेवले हामीलाई असल धन प्रदान गर्दछन्।

त्वमेकस्य वृत्रहन्नविता द्वयोरसि। उतेदृशे यथा वयम् ॥५॥
हे वृत्रासुर मार्ने इन्द्रदेव ! तिमी स्तुति गर्नेहरूका रक्षक हौ। हामीलाई रक्षा गर।

नयसीद्वति द्विषः कृणोष्युक्थशंसिनः। नृभिः सुवीर उच्यसे ॥६॥
हे इन्द्रदेव ! हाम्रा शत्रु टाढा पठाइदेऊ। हामी प्रशंसा गर्दछौं। तिमी श्रेष्ठ वीर मानिन्छौ।

ब्रह्माणं ब्रह्मवाहसं गीर्भिः सखायमृग्मियम्। गां न दोहसे हुवे ॥७॥
इन्द्रदेव ज्ञानी छन्, त्यसैले ज्ञानपूर्वक स्तुति गर्न योग्य छन्। उनी मित्र हुनाले प्रशंसाका योग्य छन्। दुहुनका लागि गाई बोलाएझैं हामी इन्द्रदेवलाई स्तुति गरेर बोलाउँछौं।

यस्य विश्वानि हस्तयोरूचुर्वसूनि नि द्विता। वीरस्य पृतनाषहः ॥८॥
शत्रु पराजित गर्ने इन्द्रदेवका दुई हातमा दुवै खाले सम्पत्ति छ भनेर ऋषिहरू भन्छन्।

वि दृढहानि चिदद्रिवो जनानां शचीपते। वृह माया अनानत ॥९॥
हे वज्रधारी सर्वशक्तिमान् इन्द्रदेव ! शत्रुका किल्ला, नगर र बल ध्वस्त गर्दछौ। हे कसैसित नझुक्ने इन्द्रदेव ! तिनीहरूको छल तिमी नष्ट गराऊ।

तमु त्वा सत्य सोमपा इन्द्र वाजानां पते। अहूमहि श्रवस्यवः ॥१०॥
हे सोमरस पान गरेर आनन्दित हुने इन्द्रदेव ! हामी अन्न प्राप्तिको कामनाले तिमीलाई आह्वान गर्दछौं।

तमु त्वा यः पुरासिथ यो वा नूनं हिते धने। हव्यः स श्रुधी हवम् ॥११॥
युद्धमा सहायताका लागि उहिले तिमीलाई बोलायौं र भविष्यमा पनि बोलाउँछौं। सङ्ग्रामका समयमा इन्द्रलाई बोलाउँछौं, उनका सहायताले शत्रुको धन प्राप्त हुन्छ। उनले हाम्रो आह्वान सुनून्।

धीभिरर्वद्भिरर्वतो वाजाँ इन्द्र श्रवाय्यान्। त्वया जेष्महितं धनम् ॥१२॥
हे इन्द्रदेव ! तिमी हाम्रो स्तुतिका लागि योग्य छौ। तिमी हाम्रो अनुकूल भएर शत्रु जित र धन प्राप्त गर।

अभूरु वीर गिर्वणो महाँ इन्द्र धने हिते। भरे वितन्तसाय्यः ॥१३॥
हे इन्द्रदेव ! तिमी वीर र स्तुति योग्य छौ। तिमीले धन प्राप्त गर्न शत्रुलाई जित्यौ।

या त ऊतिरमित्रहन्मक्षूजवस्तमासति। तया नो हिनुही रथम् ॥१४॥
हे इन्द्रदेव ! तिमी तीव्रगामी छौ। शत्रु जित्नका लागि वेगले रथ चलाउने प्रेरणा देऊ।

स रथेन रथीतमोऽस्माकेनाभियुग्वना। जेषि जिष्णो हितं धनम् ॥१५॥
हे इन्द्रदेव ! तिमी महारथी हौ। आफ्ना विजयी रथले शत्रुको सम्पत्ति तिमी जित।

य एक इत्तमु ष्टुहि कृष्टीनां विचर्षणिः। पतिर्जज्ञे वृषक्रतुः ॥१६॥
प्रजाका स्वामी इन्द्रदेव बलले सम्पन्न हुने कार्य गर्दछन् र सबैलाई विशिष्ट दृष्टिले हेर्छन्। हामी उनै इन्द्रदेवको स्तुति गरौं।

यो गृणतामिदासिथापिरूती शिवः सखा। स त्वं न इन्द्र मृडय ॥१७॥
हे इन्द्रदेव ! तिमी सबैको रक्षा गर्ने मित्रका रूप हौ। तिमी सुखदाता र स्तोताका बन्धुजस्तै हौ। हामीलाई सुख प्रदान गर।

धिष्व वज्रं गभस्त्यो रक्षोहत्याय वज्रिवः। सासहीष्ठा अभि स्पृधः ॥१८॥
हे वज्रधारी इन्द्रदेव ! तिमी असुर संहार गर्नका लागि वज्र धारण गर र स्पर्धा गर्ने शत्रुलाई पराजित गर।

प्रत्नं रयीणां युजं सखायं कीरिचोदनम्। ब्रह्मवाहस्तमं हुवे ॥१९॥
मित्ररूप, स्तुति गर्नेका प्रेरक, धन प्रदान गर्ने र आह्वान गर्न योग्य इन्द्रदेवलाई हामी आह्वान गर्दछौं।

स हि विश्वानि पार्थिवाँ एको वसूनि पत्यते। गिर्वणस्तमो अध्रिगुः ॥२०॥
अतिशय स्तुत्य र तीव्रगामी इन्द्रदेव समस्त पार्थिव धनका एकमात्र स्वामी हुन्।

स नो नियुद्भिरा पृण कामं वाजेभिरश्विभिः। गोमद्भिर्गोपते धृषत् ॥२१॥
हे गाईका अधिपति इन्द्रदेव ! धेरै गाई र घोडा प्रदान गरेर हाम्रो इच्छा पूरा गराऊ।

तद्वो गाय सुते सचा पुरुहूताय सत्वने। शं यद्गवे न शाकिने ॥२२॥
हे स्तुति गर्ने स्तोताहरू हो ! शत्रु जित्ने इन्द्रदेवको यशोगान गर। राम्रो घाँसमा गाई रमाएभैँ सोमसहितका स्तुतिमा इन्द्रदेव खुसी हुन्छन्।

न घा वसुर्नि यमते दानं वाजस्य गोमतः। यत्सीमुप श्रवद्गिरः ॥२३॥
सबैका आश्रयदाता इन्द्रदेवले स्तुति सुनिसकेपछि हामीलाई धनधान्यका रूपमा अपार वैभव प्रदान गर्नमा विराम गर्दैनन्।

कुवित्सस्य प्र हि व्रजं गोमन्तं दस्युहा गमत्। शचीभिरप नो वरत् ॥२४॥
हे इन्द्रदेव ! हिंसा गर्ने, गोठका गाई चोर्ने र लुकाउनेलाई तिमी चाँडै खोजेर दण्डित गर र गाई मुक्त गराऊ।

इमा उ त्वा शतक्रतोऽभि प्र णोनुवुर्गिरः। इन्द्र वत्सं न मातरः ॥२५॥
हे इन्द्रदेव ! बाछा कराएको सुनेपछि त्यतैतिर गाई कुदेर गएभैँ गरी तिमीतिर स्तुति कुदेर जान्छ।

दूणाशं सख्यं तव गौरसि वीर गव्यते। अश्वो अश्वायते भव ॥२६॥
हे इन्द्रदेव ! तिमी गाई र घोडाको इच्छा गर्नेको इच्छा पूर्ण गर्दछौ। तिम्रो मित्रता कहिल्यै नष्ट हुँदैन।

स मन्दस्वा ह्यन्धसो राधसे तन्वा महे। न स्तोतारं निदे करः ॥२७॥
हे इन्द्रदेव ! हामीले दिएका अन्नरूपी सोमले हृष्टपुष्ट होऊ। स्तोतालाई निन्दकका अधीनमा पर्न नदेऊ।

इमा उ त्वा सुतेसुते नक्षन्ते गिर्वणो गिरः। वत्सं गावो न धेनवः ॥२८॥
हे स्तुत्य इन्द्रदेव ! दुधालु गाई बाछाका छेउमा आफैँ पुगेभैँ गरी सोम तयार गर्ने बेलामा तिम्रासामु स्तुति स्वतः पुग्दछ।

पुरूतमं पुरूणां स्तोतॄणां विवाचि। वाजेभिर्वाजयताम् ॥२९॥
हे स्तुत्य इन्द्रदेव ! हाम्रो असल स्तुति तिमीलाई प्राप्त हुन्छ। हविष्यान्नसँगै त्यसले पनि तिमीलाई बलियो बनाओस्।

अस्माकमिन्द्र भूतु ते स्तोमो वाहिष्ठो अन्तमः। अस्मान्राये महे हिनु ॥३०॥
हे इन्द्रदेव ! हाम्रो स्तोत्र तिमीसम्म पुगोस्, त्यसबाट प्रसन्न भएर असल धन प्रदान गर।

अधि बृबुः पणीनां वर्षिष्ठे मूर्धन्नस्थात्। उरुः कक्षो न गाङ्ग्यः ॥३१॥
पणि भनिने अनार्य व्यापारीका बीच बृबुले विशिष्ट स्थानमा पाएका थिए। उनी गङ्गाको उच्च तटजस्तै उच्च स्थानमा पुगे।

यस्य वायोरिव द्रवद्भद्रा रातिः सहस्रिणी। सद्यो दानाय मंहते ॥३२॥
वायुभैँ शीघ्रगामी बृबुको हजारौँ दान दिने कल्याणकारी प्रवृत्तिले, धनको कामना गर्दै स्तुति गर्ने मजस्ता स्तोतालाई खोजेको जस्तै धन प्रदान गर्दछ।

तत्सु नो विश्वे अर्य आ सदा गृणन्ति कारवः।
बृबुं सहस्रदातमं सूरिं सहस्रसातमम् ॥३३॥
हजारौँ गाई दान गर्ने बृबुको प्रशंसा गर्नका लागि हामी उनलाई स्तुति गर्दछौँ।

## [सूक्त - ४६]

ऋषि - शंयु बार्हस्पत्य। देवता - इन्द्र। छन्द - बार्हत प्रगाथ।

त्वामिद्धि हवामहे साता वाजस्य कारवः।
त्वां वृत्रेष्विन्द्र सत्पतिं नरस्त्वां काष्ठास्वर्वतः ॥१॥
हे इन्द्रदेव ! हामी स्तोताहरू तिमीलाई आह्वान गर्दछौँ र अन्न प्राप्तिको इच्छा गर्दछौँ। तिमी सज्जनका रक्षक हौ। शत्रु जित्नका लागि हामी तिमीलाई आह्वान गर्दछौँ।

स त्वं नश्चित्र वज्रहस्त धृष्णुया महः स्तवानो अद्रिवः।
गामश्वं रथ्यमिन्द्र सं किर सत्रा वाजं न जिग्युषे ॥२॥
विपुल पराक्रमी, वज्रधारी, बलधारक हे इन्द्रदेव ! आफ्ना असुरजयी शक्तिले महान् भएका तिमी हाम्रा स्तुतिले प्रसन्न होऊ। हामी साधकलाई पशुधन र ऐश्वर्य प्रदान गर।
यः सत्राहा विचर्षणिरिन्द्रं तं हूमहे वयम्।
सहस्रमुष्क तुविनृम्ण सत्पते भवा समत्सु नो वृधे ॥३॥
शत्रुनाशक र सर्वद्रष्टा इन्द्रदेवलाई हामी आह्वान गर्दछौं। जोसले सम्पन्न, धनले सम्पन्न, सज्जनका प्रतिपालक हे इन्द्रदेव ! तिमी रणक्षेत्र र ऐश्वर्य वृद्धिमा सहायक होऊ।
बाधसे जनान् वृषभेव मन्युना घृषौ मीडह ऋचीषम।
अस्माकं बोध्यविता महाधने तनूष्वप्सु सूर्ये ॥४॥
हे इन्द्रदेव ! तिमी ऋचामा भनिएअनुसार कर्म गर्दछौ। पशुमाथि साँढेले झैं सङ्ग्राममा तिमी आक्रमण गर। महान् धन प्राप्तिका लागि गरिने सङ्ग्राममा हाम्रो रक्षा गर। हाम्रा शरीरले जल र सूर्यको उपभोग गर्न पाइरहोस्।
इन्द्र ज्येष्ठं न आ भरँ ओजिष्ठं पपुरि श्रवः।
येनेमे चित्र वज्रहस्त रोदसी ओभे सुशिप्र प्राः ॥५॥
हे हातमा वज्र लिने इन्द्रदेव ! हामीलाई ओज, बल र अन्न प्रदान गर। पोषक अन्नले द्युलोक र पृथिवी दुवै ठाउँमा पोषण प्रदान गर्दछ। त्यो अन्न हामीसित राख्न पाऔं।
त्वामुग्रमवसे चर्षणीसहं राजन्देवेषु हूमहे।
विश्वा सु नो विथुरा पिब्दना वसोऽमित्रान्त्सुषहान्कृधि ॥६॥
हे इन्द्रदेव ! हामी आफ्नो रक्षाका लागि आह्वान गर्दछौं। तिमी महान् बलशाली र शत्रु विजेता हौ। असुरबाट हामीलाई रक्षा गर। हामीलाई सङ्ग्राम जिताउने कृपा गर।
यदिन्द्र नाहुषीष्वाँ ओजो नृम्णं च कृष्टिषु।
यद्वा पञ्च क्षितीनां द्युम्नमा भर सत्रा विश्वानि पौंस्या ॥७॥
हे इन्द्रदेव ! सङ्गठित प्रजामा हुने पराक्रम र समाजका पाँच वर्गमा हुने धनको ऐश्वर्य हामीलाई देऊ। एकताबाट हामीलाई शक्ति प्राप्त होस्।
यद्वा तृक्षौ मघवन् द्रुह्यावा जने यत्पूरौ कच्च वृष्ण्यम्।
अस्मभ्यं तद्रिरीहि सं नृषाह्येऽमित्रान्पृत्सु तुर्वणे ॥८॥
हे इन्द्रदेव ! हामीलाई तक्षुजस्तो समर्थ, द्राह्युजस्तो द्रोह गर्ने र पुरुजस्तो पालन गर्ने एकत्रित बल प्रदान गर। बलवान् भएर युद्धमा शत्रुमाथि विजय प्राप्त गरौं।
इन्द्र त्रिधातु शरणं त्रिवरूथं स्वस्तिमत्।
छर्दिर्यच्छ मघवद्भ्यश्च मह्यं च यावया दिद्युमेभ्यः ॥९॥
हे इन्द्रदेव ! ऐश्वर्यसम्पन्न तीन धातुयुक्त तीनै ऋतुमा काम लाग्ने आश्रय हामीलाई प्रदान गर। भ्रम वा मोह हामीदेखि दूर राख।
ये गव्यता मनसा शत्रुमादभुरभिप्रघ्नन्ति धृष्णुया।
अध स्मा नो मघवन्निन्द्र गिर्वणस्तनूपा अन्तमो भव ॥१०॥
हे इन्द्रदेव ! गाई खोस्नका लागि आउने शत्रुमाथि तिमी घर्षण शक्तिले प्रहार गर्दछौ। हे धनवान् प्रशंसनीय इन्द्रदेव ! नजिकैका शत्रुबाट हाम्रा शरीरको रक्षा गर।
अध स्मा नो वृधे भवेन्द्र नायमवा युधि।
यदन्तरिक्षे पतयन्ति पर्णिनो दिद्यवस्तिग्ममूर्धानः ॥११॥
हे इन्द्रदेव ! तिमी हाम्रो संवर्द्धन गर्दछौ। युद्धमा शत्रुले छोडेका प्वाँख जडिएका र तेजस्वी बाण अन्तरिक्ष मार्गबाट हामीमाथि बर्सदा तिनबाट हामीलाई जोगाउँछौ।
यत्र शूरासस्तन्वो वितन्वते प्रिया शर्म पितॄणाम्।
अध स्मा यच्छ तन्वे३ तने च छर्दिरचित्तं यावय द्वेषः ॥१२॥
अनीति रोक्नका लागि शूरवीरले आफ्नो शरीर अर्पित गर्दा पितृलाई अत्यन्त सुख र सन्तोष हुन्छ। यस्ता बेलामा हे इन्द्रदेव, ! तिमी हाम्रो शरीर र पुत्रको रक्षा गर्नका लागि सुरक्षित निवास देऊ र हाम्रा शत्रुलाई लखेट।

यदिन्द्र सर्गे अर्वतश्चोदयासे महाधने।
असमने अध्वनि वृजिने पथि श्येनाँ इव श्रवस्यतः ॥१३॥

हे इन्द्रदेव ! युद्ध हुँदाखेरि तिमी तीव्रगामी श्येनपक्षीझैं विषम मार्गबाट गएर भए पनि हाम्रा घोडालाई रणक्षेत्रमा पुग्ने प्रेरणा प्रदान गर।

सिन्धूँरिव प्रवण आशुया यतो यदि क्लोशमनु ष्वणि।
आ ये वयो न वर्वृतत्यामिषि गृभीता बाह्वोर्गवि ॥१४॥

युद्धका समयमा डरले घोडा हिल्लिन्छन्। वीरको घोडा उचाइबाट गहिराइतिर तीव्र गतिले बग्ने नदीझैं वेगले बाज पक्षीले झैं झम्टिंदै कुद्छ र विजय प्राप्त गराउँछ।

[सूक्त - ४७]

ऋषि - गर्ग भारद्वाज। देवता - इन्द्र। छन्द - त्रिष्टुप् जगती।

स्वादुष्किलायं मधुमाँ उतायं तीव्रः किलायं रसवाँ उतायम्।
उतो न्वस्य पपिवांसमिन्द्रं न कश्चन सहत आहवेषु ॥१॥

तीक्ष्ण, मधुर र रुचिकर स्वादको सोमरस पिउने इन्द्रदेवलाई युद्धमा कसैले जित्दैन।

अयं स्वादुरिह मदिष्ठ आस यस्येन्द्रो वृत्रहत्ये ममाद।
पुरूणि यश्च्यौत्ना शम्बरस्य वि नवतिं नव च देह्यो३ हन् ॥२॥

सोम हर्षित गर्ने खालको छ। यही पिएर इन्द्रदेवले वृत्रासुरको नाश गरे र शम्बरका अनेकौं किल्ला ध्वस्त गरे।

अयं मे पीत उदियर्ति वाचमयं मनीषामुशतीमजीगः।
अयं षडुर्वीरमिमीत धीरो न याभ्यो भुवनं कच्चनारे ॥३॥

सोमरस बुद्धि र वाणीलाई तेजस्वी र गम्भीर बनाउँछ। सोमले नै स्वर्ग, पृथ्वी, जल, औषधि, दिन र रात बनाएको हो।

अयं स यो वरिमाणं पृथिव्या वर्ष्माणं दिवो अकृणोदयं सः।
अयं पीयूषं तिसृषु प्रवत्सु सोमो दाधारोर्व१न्तरिक्षम् ॥४॥

सोमरसले अन्तरिक्ष, पृथ्वी र द्युलोकलाई सुविस्तृत र सुदृढ पारेको हो। यसैले जल, औषधि र गाईका दुधमा अमृत स्थापित गराएको छ।

अयं विदच्चित्रदृशीकमर्णः शुक्रसद्मनामुषसामनीके।
अयं महान्महता स्कम्भनेनोद् द्यामस्तभ्नाद् वृषभो मरुत्वान् ॥५॥

अन्तरिक्षमा रहेका विभिन्न उषाहरू सोमका विचित्र ज्योतिले प्रकाशित छन्। सोम ज्यादै बलशाली, महान् र उत्साहयुक्त भएर द्युलोकमा स्थित छ।

धृषत्पिब कलशे सोममिन्द्र वृत्रहा शूर समरे वसूनाम्।
माध्यन्दिने सवन आ वृषस्व रयिस्थानो रयिमस्मासु धेहि ॥६॥

हे शूरवीर इन्द्रदेव ! तिमी धन प्राप्तिका लागि हुने सङ्ग्राममा सोमरस पिएर शत्रु संहार गर। हे धनका स्वामी ! हामीलाई धन प्रदान गर।

इन्द्र प्र णः पुरएतेव पश्य प्र नो नय प्रतरं वस्यो अच्छ।
भवा सुपारो अतिपारयो नो भवा सुनीतिरुत वामनीतिः ॥७॥

हे नीतिनिपुण इन्द्रदेव ! हामीलाई मार्गदर्शन गराऊ। तिमी श्रेष्ठ धनवान् छौ, हामीलाई सुगमतापूर्वक धन प्राप्त गराएर दुःखरूपी शत्रुबाट जोगाऊ।

उरुं नो लोकमनु नेषि विद्वान्त्स्वर्वज्ज्योतिरभयं स्वस्ति।
ऋष्वा त इन्द्र स्थविरस्य बाहू उप स्थेयाम शरणा बृहन्ता ॥८॥

हे ज्ञानवान् तथा सर्वज्ञ इन्द्रदेव ! हामीलाई यस विशाल क्षेत्रका बाधाबाट निकालेर सरलतापूर्वक लक्ष्यसम्म लैजाऊ। अभयदाता, सुखद र कल्याणकारी तेजयुक्त तिम्रा वरद हातको आश्रय हामीलाई प्राप्त होस्।

वरिष्ठे न इन्द्र वन्धुरे धा वहिष्ठयोः शतावन्नश्वयोरा।
इषमा वक्षीषा वर्षिष्ठां मा नस्तारीन्मघवन्रायो अर्यः ॥९॥

हे इन्द्रदेव ! हामीलाई उत्तम, तीव्रगामी अश्वयुक्त र विशाल रथमा बसाऊ। अन्नमध्ये श्रेष्ठ अन्न हामीलाई प्रदान गर। तिम्रो कृपाले शत्रुले धन क्षीण गर्न नसकून्।

इन्द्र मृड मह्यं जीवातुमिच्छ चोदय धियमयसो न धाराम्।
यत्किञ्चाहं त्वायुरिदं वदामि तज्जुषस्व कृधि मा देववन्तम् ॥१०॥

हे इन्द्रदेव ! हामीलाई तिमी श्रेष्ठ कर्म, तीक्ष्ण बुद्धि र सुखमय दीर्घजीवन प्रदान गर। यो प्रार्थना सुनेपछि तिम्रा कृपाले देवताहरूले हामीलाई रक्षा गरुन्।

त्रातारमिन्द्रमवितारमिन्द्रं हवेहवे सुहवं शूरमिन्द्रम्।
ह्वयामि शक्रं पुरुहूतमिन्द्रं स्वस्ति नो मघवा धात्विन्द्रः ॥११॥

हामी कल्याणकारी कामनाका संरक्षक, युद्धमा सहायक, आह्वान योग्य, पराक्रमी, सक्षम र अनेकौं स्तोताद्वारा स्तुत्य इन्द्रदेवलाई आह्वान गर्दछौं। ऐश्वर्यवान् इन्द्रदेवले हाम्रो कल्याण गरुन्।

इन्द्रः सुत्रामा स्ववाँ अवोभिः सुमृडीको भवतु विश्ववेदाः।
बाधतां द्वेषो अभयं कृणोतु सुवीर्यस्य पतयः स्याम ॥१२॥

ऐश्वर्यशाली इन्द्रदेवका रक्षणशक्तिले हाम्रो रक्षा गरुन् र सुखी बनाऊन्। इन्द्रदेव हाम्रा शत्रु संहार गरेर हामीलाई अभय प्रदान गर्दछन्। अग्निदेवता प्रसन्न भएर हामीलाई बलवान् बनाऊन्।

तस्य वयं सुमतौ यज्ञियस्यापि भद्रे सौमनसे स्याम।
स सुत्रामा स्ववाँ इन्द्रो अस्मे आराच्चिद् द्वेषः सनुतर्युयोतु ॥१३॥

इन्द्रदेव पूज्य छन्। उनले हामीलाई बुद्धि र पालन गर्ने धन दिएर कल्याण गर्दछन्। उनले टाढा रहेका र लुकेका हाम्रा शत्रु हामीभन्दा धेरै पर पुऱ्याइदिऊन्।

अव त्वे इन्द्र प्रवतो नोर्मिर्गिरो ब्रह्माणि नियुतो धवन्ते।
उरू न राधः सवना पुरूण्यपो गा वज्रिन्युवसे समिन्दून् ॥१४॥

जलको प्रवाह ओरालोतिर तीव्र गतिमा बगेझैं वज्रधारी इन्द्रदेवतर्फ स्तोत्र जान्छ। इन्द्रदेवले सोमसित जल, गाईको दुध, दही आदि मिसाउँछन्।

क ईं स्तवत्कः पृणात्को यजाते यदुग्रमिन्मघवा विश्वहावेत्।
पादाविव प्रहरन्नन्यमन्यं कृणोति पूर्वमपरं शचीभिः ॥१५॥

इन्द्रदेवलाई यजन र स्तुतिले प्रसन्न गराउन कुन मानिस समर्थ होला ? इन्द्रदेव सधैं आफ्नो शक्ति जान्दछन्। उनले सधैं हाम्रो रक्षा गर उन्नति गरुन्। बाटो हिँड्ने बटुवाले एकपछि अर्को पाइलो सारेझैं उनी एकपछि अर्को उन्नति गराउँछन्।

शृण्वे वीर उग्रमुग्रं दमायन्नन्यमन्यमतिनेनीयमानः।
एधमानद् विळुभयस्य राजा चोष्कूयते विश इन्द्रो मनुष्यान् ॥१६॥

इन्द्रदेव शत्रु दमन गर्दै र स्तोताको स्थिति बदलाउँदै स्तोतालाई अगाडि बढाउँछन्। इन्द्रदेवको पराक्रम सर्वविदित छ। सबैका राजा इन्द्रदेव याजकलाई सबै किसिमले संरक्षण गर्दछन्।

परा पूर्वेषां सख्या वृणक्ति वितर्तुराणो अपरेभिरेति।
अनानुभूतीरवधून्वानः पूर्वीरिन्द्रः शरदस्तर्तरीति ॥१७॥

जो पहिले मित्रजस्तो रहेर अनुभवी र पुराना भइसकेका छन्, तिनीहरूका तुलनामा इन्द्रदेव नयाँ याजकलाई अधिक ध्यान दिन्छन्। इन्द्रदेव उपासना नगर्नेलाई त्यागेर उपासकको कल्याण गर्दछन्।

रूपंरूपं प्रतिरूपो बभूव तदस्य रूपं प्रतिचक्षणाय।
इन्द्रो मायाभिः पुरुरूप ईयते युक्ता ह्यस्य हरयः शता दश ॥१८॥

इन्द्रदेव विभिन्न शक्तिद्वारा अनेकौं रूप बनाएर यजमानका नजिक पुग्छन्। इन्द्रदेवका रथमा उनका अनेकौं शक्तिका रूपमा सहस्र घोडा नारिएका छन्।

युजानो हरिता रथे भूरि त्वष्टेह राजति।
को विश्वाहा द्विषतः पक्ष आसत उतासीनेषु सूरिषु ॥१९॥

इन्द्रदेव स्वर्णिम आभायुक्त अश्व रथमा नारेर त्रिलोकमा प्रकाशित हुन्छन्। उनीबाहेक अन्य को स्तोताका बीचमा पुगेर रक्षा गर्न सक्ला र ?

अगव्यूति क्षेत्रमागन्म देवा उर्वी सती भूमिरंहूरणाभूत्।
बृहस्पते प्र चिकित्सा गविष्टावित्था सते जरित्र इन्द्र पन्थाम् ॥२०॥

हे इन्द्रदेव ! गाईविनाका यस क्षेत्रमा हामी आएका छौं। यस विस्तृत भूमण्डलमा दस्यु पनि बसेका

छन्। हे बृहस्पति ! हामीलाई गाई फेला पार्ने प्रेरणा देऊ। हे इन्द्रदेव ! बाटो बिराएका मानिसलाई तिमी असल मार्गमा ल्याऊ।

**दिवेदिवे सदृशीरन्यमर्धं कृष्णा असेधदप सद्मनो जाः।**
**अहन्दासा वृषभो वस्नयन्तोदव्रजे वर्चिनं शम्बरं च ॥२१॥**

इन्द्रदेव सूर्यरूपमा प्रकट भएर अन्धकार समाप्त पार्दछन्। उनले शम्बर र वर्चीजस्ता असुरलाई आफ्ना तेजले समाप्त पारेका थिए।

**प्रस्तोक इन्नु राधसस्त इन्द्र दश कोशयीर्दश वाजिनोऽदात्।**
**दिवोदासादतिथिग्वस्य राधः शाम्बरं वसु प्रत्यग्रभीष्म ॥२२॥**

हे इन्द्रदेव ! राम्रो स्तोत्र गाउने स्तोताले सुनका खजाना र दस वटा घोडा प्रदान गरे। शम्बरको धन अगिथिग्वले जिते र उही धन दिवोदासबाट हामीले पायौं।

**दशाश्वान्दश कोशान्दश वस्त्राधिभोजना।**
**दशो हिरण्यपिण्डान्दिवोदासादसानिषम् ॥२३॥**

दिवोदासले दस अश्व, दस खजाना, वस्त्र, भोजन र सुनका दस वटा ढिक्का हामीलाई प्रदान गरे।

**दश रथान्प्रष्टिमतः शतं गा अथर्वभ्यः। अश्वथः पायवेऽदात् ॥२४॥**

अश्वत्थले पायुका लागि घोडाका साथ दस रथ र सय वटा गाई अथर्वालाई प्रदान गरे।

**महि राधो विश्वजन्यं दधानान्। भरद्वाजान्त्सार्ञ्जयो अभ्ययष्ट ॥२५॥**

भरद्वाजका पुत्रले मानिसको हितकारी धन ग्रहण गरे। सृञ्जयका पुत्रले धन प्रदान गरेर सबैलाई सत्कार गरे।

**वनस्पते वीड्वङ्गो हि भूया अस्मत्सखा प्रतरणः सुवीरः।**
**गोभिः सन्नद्धो असि वीडयस्वास्थाता ते जयतु जेत्वानि ॥२६॥**

काठ आदि वनस्पतिले बनेका हे रथ ! तिमी हाम्रा मित्र हौ, बलियो अङ्ग र श्रेष्ठ योद्धाले सम्पन्न छौ, त्यसैले हामीलाई सङ्कटबाट पार लगाऊ। असल कर्मले बाँधिएका छौ, त्यसैले वीरतापूर्ण काम गर। हे रथ ! तिमीमा सवार भएका रथीले जित्नुपर्ने सबै वैभव जित्न सकोस्।

**दिवस्पृथिव्याः पर्योज उद्भृतं वनस्पतिभ्यः पर्याभृतं सहः।**
**अपामोज्मानं परि गोभिरावृतमिन्द्रस्य वज्रं हविषा रथं यज ॥२७॥**

हे अध्वर्युहरू हो ! पृथ्वी र सूर्यलोकबाट ग्रहण गरेको तेज, वनस्पतिबाट प्राप्त बल, जलबाट प्राप्त पराक्रमयुक्त रस तिमीहरू सबैतिर काममा खटाओ। सूर्यका किरणले आलोकित वज्रजस्तै बलियो रथ यजन कार्यमा समर्पित गर।

**इन्द्रस्य वज्रो मरुतामनीकं मित्रस्य गर्भो वरुणस्य नाभिः।**
**सेमां नो हव्यदातिं जुषाणो देव रथ प्रति हव्य गृभाय ॥२८॥**

हे दिव्य रथ ! इन्द्रदेवको सैन्यशक्ति मरुत्‌गणजस्तै बलियो छौ। मित्रदेवका गर्भरूपी आत्मा र वरुणदेवको नाभीजस्तै छौ। हामीले समर्पण गरेको हविष्यान्नले सन्तुष्ट होऊ।

**उप श्वासय पृथिवीमुत द्यां पुरुत्रा ते मनुतां विष्ठितं जगत्।**
**स दुन्दुभे सजूरिन्द्रेण देवैर्दूराद्दवीयो अप सेध शत्रून् ॥२९॥**

हे दुन्दुभी ! तिमी आफ्ना ध्वनिले भूलोक र द्युलोक गुञ्जायमान बनाऊ। त्यसले गर्दा जङ्गमस्थावर सबैले तिमीलाई चिनून्। तिमी इन्द्रदेव र अन्य देवताहरूसित प्रेम गर्दछौ, त्यसैले हाम्रा शत्रुलाई हामीबाट टाढा हटाऊ।

**आ क्रन्दय बलमोजो न आ धा निः ष्टनिहि दुरिता बाधमानः।**
**अप प्रोथ दुन्दुभे दुच्छुना इत इन्द्रस्य मुष्टिरसि वीडयस्व ॥३०॥**

हे दुन्दुभी ! तिम्रो ध्वनि सुनेर शत्रुका सैनिक रुन थालून्। तेज प्रदान गरेर हाम्रो पाप नष्ट पारिदेऊ। तिमी इन्द्रदेवको मुडकीजस्तै बलियो भएर हामीलाई बलियो गराऊ र हाम्रा सेनाका नजिकै रहेर दुष्ट शत्रु पूर्ण रूपले विनाश गर।

आमूरज प्रत्यावर्तयेमाः केतुमद् दुन्दुभिर्वावदीति।
समश्वपर्णाश्चरन्ति नो नरोऽस्माकमिन्द्र रथिनो जयन्तु ॥३१॥

हे इन्द्रदेव ! घोषणा गर्दै तिमी दुष्टका सेना राम्ररी लखेट। हाम्रो सेना विजयउल्लासको घोषणा गर्दै फर्कोस्। हाम्रा द्रुतगामी अश्वसँग वीर रथारोही घुम्दछन्। उनीहरू सबैले विजयश्री वरण गरुन्।

[सूक्त - ४८]

ऋषि - शंयु बार्हस्पत्य। देवता - अग्नि। छन्द - बृहती अनुष्टुप्।

यज्ञायज्ञा वो अग्नये गिरागिरा च दक्षसे।
प्रप्र वयममृतं जातवेदसं प्रियं मित्रं न शंसिषम् ॥१॥

सर्वज्ञ, अमर, हितकारी, मित्रजस्ता अग्निदेवलाई हामी प्रशंसा गर्दछौं। हे उद्गाताहरू हो ! प्रत्येक स्तुति र यज्ञको आयोजनामा उनै बलशाली अग्निदेवलाई स्तुति गर।

ऊर्जो नपातं स हिनायमस्मयुर्दाशेम हव्यदातये।
भुवद् वाजेष्वविता भुवद्वृध उत त्राता तनूनाम् ॥२॥

निरन्तर ऊर्जा बनाइरहने अग्निदेवलाई हामी प्रार्थना गर्दछौं। निश्चय नै हाम्रा लागि उनी हितकारी छन्। उनै हव्यवाहक अग्निलाई हामी हव्य प्रदान गर्दछौं। उनले हाम्रो र हाम्रा पुत्रको रक्षा गरुन्।

वृषा ह्यग्ने अजरोमहान्विभास्यर्चिषा।
अजस्रेण शोचिषा शोशुचच्छुचे सुदीतिभिः सु दीदिहि ॥३॥

हे अग्निदेव ! तिमी तेजस्वी र महान् छौ। हाम्रो इच्छा पूर्ण गराउने अति दीप्तिमान् छौ। हामीलाई पनि असल कान्तिले कान्तिमान बनाऊ।

महो देवान्यजसि यक्ष्यानुषक्तव क्रत्वोत दंसना।
अर्वाचः सीं कृणुह्यग्नेऽवसे रास्व वाजोत वंस्व ॥४॥

हे अग्निदेव ! तिमी देवताहरूका लागि यजन गर्दछौ। हाम्रा यज्ञमा पनि देवताहरूका लागि यजन गर। हामीले अर्पण गरेको आहुति ग्रहण गर र हामीलाई अन्न प्रदान गर। बुद्धि र कर्मले आफ्नो रक्षा गर्ने देवताहरूलाई हाम्रो अनुकूल बनाइदेऊ।

यमापो अद्रयो वना गर्भमृतस्य पिप्रति।
सहसा यो मथितो जायते नृभिः पृथिव्या अधि सानवि ॥५॥

हे अग्निदेव ! अरणी, पेल्ने ढुङ्गा र जल मिसिएको सोमरसले तिमीलाई पुष्ट गराउँछन्। ऋत्विक्‌हरूले अरणी मन्थनबाट तिमीलाई उत्पन्न गरे। पृथ्वीका यज्ञमा तिमी प्रतिष्ठित हुन्छौ। यज्ञका गर्भरूप तिमी नै हौ।

आ यः पप्रौ भानुना रोदसी उभे धूमेन धावते दिवि।
तिरस्तमो ददृश ऊर्म्यास्वा श्यावास्वरुषो वृषा श्यावा अरुषो वृषा ॥६॥

अग्निदेव आफ्ना कान्तिले सम्पूर्ण द्यावापृथिवी र धुवाँले अन्तरिक्षलाई परिपूर्ण गर्दछन्। उनैले कामनाअनुसारको वर्षा गराउँछन्।

बृहद्भिरग्ने अर्चिभिः शुक्रेण देव शोचिषा।
भरद्वाजे समिधानो यविष्ठ्य रेवन्नः शुक्र दीदिहि द्युमत्पावक दीदिहि ॥७॥

हे ठूलो ज्वाला युक्त तरुण अग्निदेव ! सम्पन्नता र पवित्रता प्रदान गर्ने तिमी महान् छौ। तिमी आफ्ना प्रखर तेजले अत्यन्त तेजस्वीरूपमा प्रज्वलित होऊ र भरद्वाजका लागि ऐश्वर्य प्रदान गर।

विश्वासां गृहपतिर्विशामसि त्वमग्ने मानुषीणाम्।
शतं पूर्भिर्यविष्ठ पाह्यंहसः समेद्धारं शतं हिमाः स्तोतृभ्यो ये च ददति ॥८॥

हे अग्निदेव ! तिमी सबै मानिसरूपी प्रजाका घरका स्वामीजस्तै छौ। तिमीलाई हामी सय वर्षसम्म प्रदीप्त गर्न सकौं। तिमी सयौं उपायले पाप र शत्रुबाट हामीलाई रक्षा गर र जुन यजमानले तिम्रा स्तोतालाई अन्न प्रदान गर्दछन्, तिनको पनि रक्षा गर।

त्वं नश्चित्र ऊत्या वसो राधांसि चोदय।
अस्य रायस्त्वमग्ने रथीरसि विदा गाधं तुचे तु नः ॥९॥

हे सबैका आश्रयदाता अग्निदेव ! तिम्रो शक्ति अद्भुत र अपार छ। तिमी आफ्ना क्षमताले वैभव ल्याउन समर्थ छौ। हामीकहाँ समृद्धि आउन देऊ र हाम्रा सन्तानलाई पनि प्रतिष्ठा प्रदान गर।

पर्षि तोकं तनयं पर्तृभिष्ट्वमदब्धैरप्रयुत्वभिः।
अग्ने हेडांसि दैव्या युयोधि नोऽदेवानि ह्वरांसि च ॥१०॥

हे अग्निदेव ! हाम्रा पुत्रपौत्रलाई विरोधमुक्त, सहयोगयुक्त, पराजित नहुने बनाएर आफ्ना संरक्षण साधनले पालन गर। दैवी प्रकोपबाट हाम्रो रक्षा गर, मानुषी वा राक्षसी वृत्तिबाट पनि हामीलाई रक्षा गर।

आ सखायः सबर्दुघां धेनुमजध्वमुप नव्यसा वचः। सृजध्वमनपस्फुराम् ॥११॥

हे मित्रहरू हो ! नवीन स्तुतिद्वारा पोषक दुध दिने गाई लिएर आओ। हानी नपुऱ्याईकन तिनलाई बन्धनमुक्त गराओ।

या शर्धाय मारुताय स्वभानवे श्रवोऽमृत्यु धुक्षत।
या मृडीके मरुतां तुराणां या सुम्नैरेवयावरी ॥१२॥

गाईले बलयुक्त स्वप्रकाशित मरुत्हरूलाई अमर अन्नरूपी दुध प्रदान गरे। तिनले द्रुतगामी मरुत्हरूलाई सुख प्रदान गर्दछन्। ती गाई असल कामले प्राप्त हुन्छन्।

भरद्वाजायाव धुक्षत द्विता। धेनुं च विश्वदोहसमिषं च विश्वभोजसम् ॥१३॥

हे मरुत्हरू हो ! भरद्वाजहरूलाई विश्वदोहकका रूपमा संसार दुहुने र विश्वभोजसका रूपमा संसार भोग गर्ने अन्नरूपी आफ्ना दुई वस्तु तिमीहरू प्रदान गर्दछौ।

तं व इन्द्रं न सुक्रतुं वरुणमिव मायिनम्।
अर्यमणं न मन्द्रं सृप्रभोजसं विष्णुं न स्तुष आदिशे ॥१४॥

हे वरुणजस्तै स्तुतियोग्य मरुत्हरू हो ! तिमीहरू इन्द्रदेवका कार्यमा सहयोग गर्दछौ। विष्णुदेवजस्तै सुखदायी, उत्तम भोजन प्रदान गर्दछौ। धनका लागि हामी स्तुति गर्दछौं।

त्वेषं शर्धो न मारुतं तुविष्वण्यनर्वाणं पूषणं सं यथा शता। सं सहस्रा
कारिषच्चर्षणिभ्य आँ आविर्गूळ्हा वसू करत्सुवेदा नो वसू करत् ॥१५॥

तेजस्वी, धेरै तिरबाट प्रशंसित, पोषणयुक्त, बलवान् मरुत्हरूले गुप्त धन प्रकट गरुन् र हामीलाई सुखपूर्वक उपलब्ध गराऊन्।

आ मा पूषन्नुप द्रव शंसिषं नु ते अपिकर्ण आघृणे। अघा अर्यो अरातयः ॥१६॥

हे पूषादेव ! हामी तिम्रो यशोगान गर्दछौं। गोप्य रूपमा रक्षा गर्नका लागि आऊ भनेर हामी प्रार्थना गर्दछौं र कन्जुस एवं पापी शत्रु हामीबाट पर रहून्।

मा काकम्बीरमुद्वृहो वनस्पतिमशस्तीर्वि हि नीनशः।
मोत सूरो अह एवा चन ग्रीवा आदधते वेः ॥१७॥

हे पूषादेव ! हाम्रो निन्दा गर्नेलाई तिमी मारिदेऊ। व्याधा र सिकारीले पक्षी पक्रेझैं शत्रुले हामीलाई हरण गर्न नसकून्। हे देवता ! तिमी काकम्बरी नामको वनस्पति नष्ट हुन नदेऊ।

दृतेरिव तेऽवृकमस्तु सख्यम्। अच्छिद्रस्य दधन्वतः सुपूर्णस्य दधन्वतः ॥१८॥

हे पूषादेव ! हामीसित तिम्रो मित्रता त्रुटिरहित, दहीजस्तै निर्बाध र निरन्तर रहोस्।

परो हि मर्त्यैरसि समो देवैरुत श्रिया।
अभि ख्यः पूषन् पृतनासु नस्त्वमवा नूनं यथा पुरा ॥१९॥

हे पूषादेव ! तिमी मानवभन्दा श्रेष्ठ र अन्य देवताहरूजस्तै धनवान् छौ। हामीलाई उहिलेको जस्तै रक्षा गर।

वामी वामस्य धूतयः प्रणीतिरस्तु सूनृता।
देवस्य वा मरुतो मर्त्यस्य वेजानस्य प्रयज्यवः ॥२०॥

हे शत्रु थर्काउने, पूजनीय मरुत्हरू हो ! तिम्रो जस्तै वाणीको सत्यता हामीलाई पनि प्राप्त होस्। यज्ञ गर्ने मानिस र देवताको वाणी प्रशंसनीय एवं इच्छा लागेको धन प्रदान गर्ने होस्।

सद्यश्चिद्यस्य चर्कृतिः परि द्यां देवो नैति सूर्यः।
त्वेषं शवो दधिरे नाम यज्ञियं मरुतो वृत्रहं शवो ज्येष्ठं वृत्रहं शवः ॥२१॥

पूजनीय मरुत्हरू शत्रु नष्ट गर्न समर्थ छन्। उनीहरू आफ्ना कर्मकौशलले सूर्यदेवझैं अन्तरिक्षमा र सर्वत्र व्याप्त हुन्छन्।

सकृद्ध द्यौरजायत सकृद्भूमिरजायत।
पृश्न्या दुग्धं सकृत्पयस्तदन्यो नानु जायते ॥२२॥

द्युलोक एउटै उत्पन्न भयो, पृथ्वी पनि एउटै उत्पन्न भयो, गाईको दुध पनि एउटै उत्पन्न भएको छ। एकभन्दा बढी कुनै पदार्थ उत्पन्न भएन।

[सूक्त - ४९]

ऋषि - ऋजिश्वा भारद्वाज। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप् शक्वरी।

स्तुषे जनं सुव्रतं नव्यसीभिर्गीर्भिर्मित्रावरुणा सुम्नयन्ता।
त आ गमन्तु त इह श्रुवन्तु सुक्षत्रासो वरुणो मित्रो अग्निः ॥१॥

असल कर्म गर्ने मित्रावरुणदेवलाई हामी नयाँ स्तोत्रले स्तुति गर्दछौँ। उनले हाम्रो सुख बढाऊन्। श्रेष्ठ, पराक्रमी मित्रावरुण र अग्निदेव यहाँ आएर हाम्रो रक्षा गरुन्।

विशोविश ईड्यमध्वरेष्वदृप्तक्रतुमरतिं युवत्योः।
दिवः शिशुं सहसः सूनुमग्निं यज्ञस्यउ केतुमरुषं यजध्यै ॥२॥

तेजस्वी अग्निदेवलाई यज्ञमा प्रजाले स्तुति गर्दछन्। अग्निले निरहङ्कारी कर्म गर्दछन्। स्वर्ग र पृथिवीमा गमन गर्ने, बलका पुत्र अग्निदेव यज्ञका ध्वजाजस्तै छन्। तेजस्वी अग्निदेवलाई हामी यज्ञ पूरा गर्नका लागि स्तुति गर्दछौँ।

अरुषस्य दुहितरा विरूपे स्तृभिरन्या पिपिशे सूरो अन्या।
मिथस्तुरा विचरन्ती पावके मन्म श्रुतं नक्षत ऋच्यमाने ॥३॥

एक अर्कोभन्दा विपरीत रूप भएका काली रात्रि र उज्याली दिवस सूर्यदेवका दुई पुत्री हुन्। नक्षत्रसँग रात्रि र सूर्यसँग दिवस रहने गर्दछन्। निरन्तर गतिशील, पवित्र गराउने यी दुवैले हाम्रो स्तोत्र सुनून्।

प्र वायुमच्छा बृहती मनीषा बृहद्रयिं विश्ववारं रथप्राम्।
द्युतद्यामा नियुतः पत्यमानः कविः कविमियक्षसि प्रयज्यो ॥४॥

हे अध्वर्युहरू हो ! तिमीहरू व्यापक बुद्धिले सम्पन्न यज्ञ आदि कार्यमा नियुक्त होओ। महान् ऐश्वर्यले सम्पन्न, सम्पूर्ण ज्ञानका भण्डार, सबैतिर व्याप्त, रथले सम्पन्न, तेजस्वी अग्निलाई तिमीहरू प्रज्वलित गर र उत्तम बुद्धिले वायुदेवको स्तुति गर।

स मे वपुश्छदयदश्विनोर्यो रथो विरुक्मान्मनसा युजानः।
येन नरा नासत्येषयध्यै वर्तिर्याथस्तनयाय त्मने च ॥५॥

अश्विनीकुमारको रथ उत्तम दीप्ति भएको छ, त्यसमा मनकै इसाराले अश्व नियोजित हुन्छन्। हे अश्विनीकुमार हो ! तिमीहरू यस्ता रथमा चढेर पर्याप्त धन भरेर स्तोता र तिनका पुत्रहरूको इच्छा पूरा गराउनका लागि आओ।

पर्जन्यवाता वृषभा पृथिव्याः पुरीषाणि जिन्वतमप्यानि।
सत्यश्रुतः कवयो यस्य गीर्भिर्जगतः स्थातर्जगदा कृणुध्वम् ॥६॥

हे पर्जन्य र वायुदेव ! तिमीहरू पृथ्वीको अन्न वृद्धिका लागि अन्तरिक्षबाट जलको वर्षा गर। हे मरुत्हरू हो ! हामी सबैले तिमीहरूको स्तुति गर्दछौँ। तिमीहरूकै कृपाले समस्त प्रजा समृद्ध हुन्छन्।

पावीरवी कन्या चित्रायुः सरस्वती वीरपत्नी धियं धात्।
ग्नाभिरच्छिद्रं शरणं सजोषा दुराधर्षं गृणते शर्म यंसत् ॥७॥

सुन्दर, उत्तम अन्न प्रदान गर्ने, वीरलाई पालन गर्ने, पवित्र गराउने सरस्वती देवी हुन्। उनले हाम्रा यज्ञको अनुष्ठान धारण गरुन्। देवाङ्गनाहरू प्रसन्न भएपछि स्तोतालाई प्वाल नपरेको निवास प्रदान गरेर हित गरुन्।

पथस्पथः परिपतिं वचस्या कामेन कृतो अभ्यानडर्कम्।
स नो रासच्छुरुधश्चन्द्राग्रा धियंधियं सीषधाति प्र पूषा ॥८॥

उत्तम स्तोत्रले प्रार्थना गर्दा सत्यको मार्गमा प्रेरित गर्ने पूषादेवले हामीलाई आह्लाददायक र सन्तापनाशक साधन प्रदान गर्दै सिद्धि प्रदान गर्ने हाम्रो बुद्धि सत्कर्ममा लगाऊन्।

प्रथमभाजं यशसं वयोधां सुपाणिं देवं सुगभस्तिमृभ्वम्।
होता यक्षद्यजतं पस्त्यानामग्निस्त्वष्टारं सुहवं विभावा ॥९॥
तेजस्वी अग्निदेवले त्वष्टादेवको यजन गरुन्। त्वष्टादेव देवताहरूमा प्रथम यजनीय, यशस्वी, सुन्दर हातपाखुरा भएका, महान् र आह्वान गर्न योग्य छन्।

भुवनस्य पितरं गीर्भिराभी रुद्रं दिवा वर्धया रुद्रमक्तौ।
बृहन्तमृष्वमजरं सुषुम्नमृधग्घुवेम कविनेषितासः ॥१०॥
उत्तम स्तुतिले दिन र रातमा भुवनका पिता रुद्रदेवको यशोगान गरुन्। हामी दर्शनीय, नबुढिने र सुखदाता प्रभुको स्तुति सधैँ गर्दछौँ।

आ युवानः कवयो यज्ञियासो मरुतो गन्त गृणतो वरस्याम्।
अचित्रं चिद्धि जिन्वथा वृधन्त इत्था नक्षन्तो नरो अङ्गिरस्वत् ॥११॥
हे युवा, ज्ञानी, यजनीय मरुत्‌हरू हो ! स्तोताका नजिक जाओ। अग्निका सहयोगले अन्तरिक्षमा वृद्धि भएर जल वर्षा गर्दै औषधिविनाका देशलाई पनि सन्तुष्ट गराओ।

प्र वीराय प्र तवसे तुरायाजा यूथेव पशुरक्षिरस्तम्।
स पिस्पृशति तन्वि श्रुतस्य स्तृभिर्न नाकं वचनस्य विपः ॥१२॥
गोठालाले गाईको बथानलाई छिटो घर पुऱ्याउन धपाएझैँ स्तोताहरू मरुत्‌हरूतिर जानका लागि आफ्ना स्तोत्रलाई प्रेरित गरुन्। स्तोताको स्तुतिले मरुत्‌हरूको मन र शरीर स्पर्श गर्दछ र नक्षत्रले अन्तरिक्षको शोभा बढेझैँ उनीहरूको शोभा बढ्दछ।

यो रजांसि विममे पार्थिवानि त्रिश्चिद्विष्णुर्मनवे बाधिताय।
तस्य ते शर्मन्नुपदद्यमाने राया मदेम तन्वा३ तना च ॥१३॥
विष्णुदेवले मनुको दुःख हटाउनका लागि तीन चरणमा पराक्रम गरे। हे देव ! तिमीले दिएका घर, धन, शरीर र पुत्रसहित हामी आनन्दसित रहौँ।

तन्नोऽहिर्बुध्न्यो अद्भिरर्कैस्तत्पर्वतस्तत्सविता चनो धात्।
तदोषधीभिरभि रातिषाचो भगः पुरन्धिर्जिन्वतु प्र राये ॥१४॥
हामीले अनेकौँ किसिमका स्तोत्रले स्तुति गरेका अहिर्बुध्न्य मेघ, पर्वत र सवितादेवले हामीलाई अन्न र जल दिऊन्। भगदेवले हामीलाई धन दिऊन् र विश्वेदेवताले हामीलाई अन्न प्रदान गरुन्।

नू नो रयिं रथ्यं चर्षणिप्रां पुरुवीरं मह ऋतस्य गोपाम्। क्षयं दाताजरं
येन जनान्त्स्पृधो अदेवीरभि च क्रमाम विश आदेवीरभ्य१ श्नवाम ॥१५॥
हे विश्वेदेवताहरू हो ! हामीलाई नभाँचिने रथ र घर, मानिसहरूलाई सन्तुष्ट गर्ने अन्न, पुत्र र अनुचर प्रदान गर। त्यसले हामी शत्रुमाथि आक्रमण गरेर जित्न सकौँ। तिमी देवताका उपासकलाई संरक्षण प्रदान गर।

[सूक्त - ५०]

ऋषि - ऋजिश्वा भारद्वाज। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

हुवे वो देवीमदितिं नमोभिर्मृळीकाय वरुणं मित्रमग्निम्।
अभिक्षदामर्यमणं सुशेवं त्रातॄन्देवान्त्सवितारं भगं च ॥१॥
हे देवताहरू हो ! सुखको कामनाले हामी देवमाता अदिति, वरुण, मित्र, अग्नि, शत्रु संहारक एवं सेवनीय अर्यमा, सविता, भग र रक्षा गर्ने समस्त देवताप्रति नमस्कारपूर्वक उपासना गर्दछौँ।

सुज्योतिषः सूर्य दक्षपितॄननागास्त्वे सुमहो वीहि देवान्।
द्विजन्मानो य ऋतसापः सत्याः स्वर्वन्तो यजता अग्निजिह्वाः ॥२॥
हे सर्वप्रेरक सूर्यदेव ! श्रेष्ठ कान्ति भएका देवताहरूलाई हाम्रो अनुकूल बनाइदेऊ। जुन द्विज सदाचारी, सत्यवादी, आत्मवान् र पूजनीय छन्, त्यस्ता अग्निरूपी जिव्रा भएका देवतालाई हाम्रो अनुकूल गराऊ।

उत द्यावापृथिवी क्षत्रमुरु बृहद्रोदसी शरणं सुषुम्ने।
महस्करथो वरिवो यथानोऽस्मे क्षयाय धिषणे अनेहः ॥३॥
हे द्यावापृथिवी ! हामीलाई तिमी व्यापक क्षेत्र भएको विशाल निवास देऊ। हामी बलवान् र ऐश्वर्यवान् होऔँ। हामीलाई निष्पाप घर प्राप्त होस्।

आ नो रुद्रस्य सूनवो नमन्तामद्या हूतासो वसवोऽधृष्टाः ।
यदीमर्भे महति वा हितासो बाधे मरुतो अह्वाम देवान् ॥४॥

सबैलाई निवास दिने, रुद्रका पुत्र हे अहिंसक मरुत् हो ! हामी तिमीहरूलाई आह्वान गर्दछौं। तिमीहरू सानाठूला सङ्ग्राममा हाम्रो कल्याण गर।

मिम्यक्ष येषु रोदसी नु देवी सिषक्ति पूषा अभ्यर्धयज्वा ।
श्रुत्वा हवं मरुतो यद्ध याथ भूमा रेजन्ते अध्वनि प्रविक्ते ॥५॥

तेजस्वी द्यावापृथिवी जसका साथमा छन्, उपासकलाई समृद्ध गराउने पूषादेव जसको सेवा गर्दछन्, उनै मरुत्‌हरूलाई हामी आह्वान गर्दछौं। उनका आगमनमा सबै प्राणीहरू काम्न थाल्दछन्।

अभि त्यं वीरं गिर्वणसमर्चेन्द्रं ब्रह्मणा जरितर्नवेन ।
श्रवदिद्धवमुप च स्तवानो रासद्वाजाँ उप महो गृणानः ॥६॥

हे स्तोताहरू हो ! तिमीहरू उनै प्रशंसनीय इन्द्रदेवलाई नयाँ स्तोत्रले स्तुति गर। हाम्रो स्तुति सुनेर प्रसन्न भएका इन्द्रदेवले हामीलाई बल र अन्न प्रदान गरुन्।

ओमानमापो मानुषीरमृक्तं धात तोकाय तनयाय शं योः ।
यूयं हि ष्ठा भिषजो मातृतमा विश्वस्य स्थातुर्जगतो जनित्रीः ॥७॥

हे जलदेवता ! तिमी स्थावरजङ्गमलाई उत्पन्न गराउँछौ। तिमी मानिसका हितैषि हौ। हाम्रा पुत्रपौत्रादिको रक्षा गर्नका लागि अन्न प्रदान गर। माताभन्दा ठूला चिकित्सक हौ। त्यसैले हाम्रा सबै विकारहरू नष्ट गरिदेऊ।

आ नो देवः सविता त्रायमाणो हिरण्यपाणिर्यजतो जगम्यात् ।
यो दत्रवाँ उषसो न प्रतीकं व्यूर्णुते दाशुषे वार्याणि ॥८॥

सवितादेवका रक्षक स्वर्णिम रश्मि हुन्। उषाजस्तै प्रकाशमान, पूजनीय र धनवान् सवितादेव मनुष्यलाई अभीष्ट धन प्रदान गर्न हामीकहाँ आऊन्।

उत त्वं सूनो सहसो नो अद्या देवाँ अस्मिन्नध्वरे ववृत्याः ।
स्यामहं ते सदमिद्राती तव स्यामग्नेऽवसा सुवीरः ॥९॥

हे बलका पुत्र अग्निदेव ! आज हाम्रा यज्ञशालामा देवताहरू लिएर आऊ। हामी तिम्रो अनुकूलता सधैं सम्झन्छौं। तिम्रा कृपाले पुत्रपौत्रादिसहित सुरक्षित र आनन्दित रहौं।

उत त्या मे हवमा जग्म्यातं नासत्या धीभिर्युवमङ्ग विप्रा ।
अत्रिं न महस्तमसोऽमुमुक्तं तूर्वतं नरा दुरितादभीके ॥१०॥

हे बुद्धिमान् अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै आफ्ना श्रेष्ठ कर्मसहित हामीकहाँ आओ। अत्रि ऋषिलाई अन्धकारबाट छुटाएझैं हामीलाई पापका सङ्ग्रामबाट जोगाओ।

ते नो रायो द्युमतो वाजवतो दातारो भूत नृवतः पुरुक्षोः ।
दशस्यन्तो दिव्याः पार्थिवासो गोजाता अप्या मृडता च देवाः ॥११॥

हे देवताहरू हो ! तिमी पुत्र आदिले युक्त धन प्रदान गर्दछौ। आदित्य, वसु, मरुत्‌हरू आदि देवताले हाम्रा इच्छा पूरा गरुन् र हामीलाई सुखी बनाऊन्।

ते नो रुद्रः सरस्वती सजोषा मीळ्हुष्मन्तो विष्णुर्मृळन्तु वायुः ।
ऋभुक्षा वाजो दैव्यो विधाता पर्जन्यावाता पिप्यतामिषं नः ॥१२॥

रुद्र, सरस्वती, विष्णु, वायु, ऋभुक्षा, दिव्य अन्न र विधाताले हामीलाई सुखी बनाऊन्। पर्जन्य र वायुदेवले हामीलाई अन्न प्रदान गरुन्।

उत स्य देवः सविता भगो नोऽपां नपादवतु दानु पप्रिः ।
त्वष्टा देवेभिर्जनिभिः सजोषा द्यौर्देवेभिः पृथिवी समुद्रैः ॥१३॥

प्रसिद्ध सवितादेव, भगदेव र पर्याप्त धन प्रदान गर्ने अग्निदेवले हाम्रो रक्षा गरुन्। सबैसित प्रेम गर्ने त्वष्टादेव, द्युलोक, समुद्र र पृथ्वी आदिले हाम्रो रक्षा गरुन्।

उत नोऽहिर्बुध्न्यः शृणोत्वज एकपात्पृथिवी समुद्रः ।
विश्वे देवा ऋतावृधो हुवानाः स्तुता मन्त्राः कविशस्ता अवन्तु ॥१४॥

अहिर्बुध्न्य, अज, एकपाद, पृथ्वी र समुद्र आदिले हाम्रो प्रार्थना सुनुन्। यज्ञलाई बढाउने स्तोत्र र ऋषिहरूबाट स्तुति गरिंदा देवताले हाम्रो रक्षा गरुन्।

एवा नपातो मम तस्य धीभिर्भरद्वाजा अभ्यर्चन्त्यर्कैः।
ग्ना हुतासो वसवोऽधृष्टा विश्वे स्तुतासो भूता यजत्राः ॥१५॥
हे देवताहरू हो ! तिमहरू स्तुतिले अहिंसित छौ, सबैलाई निवास प्रदान गर्दछौ र आफ्ना शक्तिरूपा पत्नीहरूसहित सर्वत्र पूजनीय छौ। हामी भरद्वाजका वंशज ऋषिहरू तिमीहरू सबै देवताको स्तुति गर्दछौं।

[सूक्त - ५१]
ऋषि - ऋजिश्वा भारद्वाज। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।
उदु त्यच्चक्षुर्महि मित्रयोरॉं एति प्रियं वरुणयोरदब्धम्।
ऋतस्य शुचि दर्शतमनीकं रुक्मो न दिव उदिता व्यद्यौत् ॥१॥
महान् मित्रावरुणका प्रिय, निर्मल, दर्शनीय, अदम्य, तेजयुक्त ऋतका सेना प्रकट भएर देखिँदै छन्। प्रकाशित भएर यस तेजले द्युलोकको अलङ्कारजस्तो शोभा पाउँछ।

वेद यस्त्रीणि विदथान्येषां देवानां जन्म सनुतरा च विप्रः।
ऋजु मर्तेषु वृजिना च पश्यन्नभि चष्टे सूरो अर्य एवान् ॥२॥
ज्ञानवान्, तीनै भुवनका ज्ञाता, दुर्जय देताहरूको जन्मका विषयमा जानेका मानिसका शुभाशुभ कर्म देख्ने सूर्यदेव धनका स्वामी हुन् र आवश्यकता पूरा गराउँछन्।

स्तुष उ वो म ऋतस्य गोपानदितिं मित्रं वरुणं सुजातान्।
अर्यमणं भगमदब्धधीतीनच्छा वोचे सधन्यः पावकान् ॥३॥
अदिति, मित्र, वरुण, भग र अर्यमा आदि यज्ञको रक्षा गर्ने देवताहरूलाई हामी स्तुति गर्दछौं। देवताहरूका कर्मले यी सबै पवित्र हुन्छन्।

रिशादसः सत्पतीं रदब्धान्महो राज्ञः सुवसनस्य दातॄन्।
यूनः सुक्षत्रान्क्षयतो दिवो नॄनादित्यान्याम्यदितिं दुवोयु ॥४॥
हे अदितिका पुत्र देवताहरू हो ! तिमीहरू दयालु, चिरयुवा, महाराजा र बलशाली छौ। तिमीहरू दुष्ट नाश गर्दछौ र श्रेष्ठ ऐश्वर्यवान् हुनाले निवास प्रदान गर्दछौ। हे अदितिका पुत्रहरू हो ! हामी माता अदितिका आश्रयमा जान्छौं।

द्यौ३ष्पितः पृथिवि मातरध्रुगग्ने भ्रातर्वसवो मृडता नः।
विश्व आदित्या अदिते सजोषा अस्मभ्यं शर्म बहुलं वि यन्त ॥५॥
हे वसुहरू हो ! द्यावापृथिवी र अग्निदेवसहित हाम्रो कल्याण गर। हे अदिति र समस्त आदित्यहरू हो ! तिमीहरू आपसमा प्रीतिपूर्वक रहेर हामीलाई धेरै सुख प्रदान गर।

मा नो वृकाय वृक्ये समस्मा अघायते रीरधता यजत्राः।
यूयं हि ष्ठा रथ्यो नस्तनूनां यूयं दक्षस्य वचसो बभूव ॥६॥
हे पूजनीय देवताहरू हो ! हामीलाई क्रूर ब्वाँसा र तिनका कुटिलताबाट जोगाओ। हाम्रो शरीर, बल र वाणीलाई महानतातर्फ अघि बढ्नका लागि प्रेरित गर।

मा व एनो अन्यकृतं भुजेम मा तत्कर्म वसवो यच्चयध्वे।
विश्वस्य हि क्षयथ विश्वदेवाः स्वयं रिपुस्तन्वं रीरिषीष्ट ॥७॥
हे देवताहरू हो ! अकाले गरेका पापकर्मको दुष्परिणाम हामीले भोग्नु नपरोस्। हामी दण्डनीय पापकर्म नगरौं। हे विश्वका स्वामी देवताहरू हो ! तिमीहरूका कृपाले शत्रुको शरीर आफैं समाप्त होस्।

नम इदुग्रं नम आ विवासे नमो दाधार पृथिवीमुत द्याम्।
नमो देवेभ्यो नम ईश एषां कृतं चिदेनो नमसा विवासे ॥८॥
विनम्र नमस्कार महान् हुन्छ। हामी नमस्कारले सेवा गर्दछौं। नमस्कारले द्युलोक र पृथिवीलोक धारण गर्दछ। हामी देवताहरूलाई नमस्कार गर्दै, नमस्कारले नै प्रभावित गराउँछौं। आफूले गरेका कर्मको भोग नष्ट गर्नका लागि नमस्कार गर्दछौं।

ऋतस्य वो रथ्यः पूतदक्षानृतस्य पस्त्यसदो अदब्धान्।
ताँ आ नमोभिरुरुचक्षसो नॄन्विश्वान्व आ नमे महो यजत्राः ॥९॥
हे यज्ञको नेतृत्व गर्ने, बलवान्, यज्ञशालामा निवास गर्ने, अपराजित र महिमावान् देवताहरू हो ! हामी नमस्कारपूर्वक तिमीहरूको स्तुति गर्दछौं।

ते हि श्रेष्ठवर्चसस्त उ नस्तिरो विश्वानि दुरिता नयन्ति।
सुक्षत्रासो वरुणो मित्रो अग्निर्ऋतधीतयो वक्मराजसत्याः ॥१०॥

हाम्रो पाप दूर गर्ने देवताहरू तेजस्वी छन्। सत्यवादी, सदाचारी र सत्यको बल हुनेहरू वरुण, मित्र र अग्नि आदि सबै देवताका आश्रयमा रहन्छन्।

ते न इन्द्रः पृथिवी क्षाम वर्धन् पूषा भगो अदितिः पञ्च जनाः।
सुशर्माणः स्ववसः सुनीथा भवन्तु नः सुत्रात्रासः सुगोपाः ॥११॥

निरन्तर बढ्ने इन्द्रदेव, पूषा, भग, अदिति र पञ्चजनले हाम्रा घरको उत्तम रक्षा गरुन्। अन्न प्रदान गर्ने, सुखदायक, आश्रय प्रदान गर्ने देवताहरूले हामीलाई रक्षा गरुन्।

नू सद्मानं दिव्यं नंशि देवा भारद्वाजः सुमतिं याति होता।
आसानेभिर्यजमानो मियेधैर्देवानां जन्म वसूयुर्ववन्द ॥१२॥

आहुति अर्पित गर्ने ऋषि र यजमानहरू धन प्राप्तिका इच्छाले देवताको स्तुति गर्दछन्। देवता प्रसन्न भएर हामी भारद्वाजहरूलाई भव्य निवास प्रदान गरुन्।

अप त्यं वृजिनं रिपुं स्तेनमग्ने दुराध्यम्। दविष्ठमस्य सत्पते कृधी सुगम् ॥१३॥

हे अग्निदेव ! दुष्ट चोर र पापी शत्रुलाई तिमी पर भगाऊ। तिनीहरूको स्वभाव बदल र तिनीहरूबाट हाम्रो रक्षा गर्दै सर्वतोभावले हित गर।

ग्रावाणः सोम नो हि कं सखित्वनाय वावशुः।
जही न्यत्रिणं पणिं वृको हि षः ॥१४॥

हे सोम ! ब्वाँसोजस्तो स्वभाव भएका दण्डनीय पणिको संहार गर। तिम्रो मित्रताका इच्छुक हामी ग्रावाको स्वरूपमा रहेको यो ढुङ्गोसहित प्रस्तुत भएका छौँ।

यूयं हि ष्ठा सुदानव इन्द्रज्येष्ठा अभिद्यवः।
कर्ता नो अध्वन्ना सुगं गोपा अमा ॥१५॥

हे देवताहरू हो ! उत्तम दानवीर र तेजस्वी इन्द्रदेवका साथ हाम्रो मार्ग सुगम गराएर हामीलाई रक्षा गर।

अपि पन्थामगन्महि स्वस्तिगामनेहसम्।
येन विश्वाः परि द्विषो वृणक्ति विन्दते वसु ॥१६॥

जुन मार्गबाट गमन गर्दा शत्रु परै रहन्छन् र मनग्गे धन पनि लाभ हुन्छ, हामी त्यस्तै निष्पाप एवं सुखद मार्गबाट हिँडौं।

## [सूक्त – ५२]

ऋषि – ऋजिश्वा भारद्वाज। देवता – विश्वेदेवा। छन्द – त्रिष्टुप्।

न तद्दिवा न पृथिव्यानु मन्ये न यज्ञेन नोत शमीभिराभिः।
उब्जन्तु तं सुभ्वः पर्वतासो नि हीयतामतियाजस्य यष्टा ॥१॥

यज्ञको मर्यादा अतिक्रमण गर्ने अतियाज नामको कर्मकाण्ड न त द्युलोक सुहाउँदो छ, न पृथ्वीको लागि मान्य छ। त्यो न त यज्ञीय व्यवस्था सुहाउँदो छ न शान्तिपूर्ण कर्मका अनुष्ठानसँग सुहाउँदो छ। पर्वतले त्यसलाई उत्पीडित गरोस् र त्यस्ता ऋत्विक्लाई पछुतो होस्।

अति वा यो मरुतो मन्यते नो ब्रह्म वा यः क्रियमाणं निनित्सात्।
तपूंषि तस्मै वृजिनानि सन्तु ब्रह्मद्विषमभि तं शोचतु द्यौः ॥२॥

हे मरुत्हरू हो ! हाम्रो मन्त्रपाठ आदिको अतिक्रमण वा अनादर गर्नेलाई अग्निका ज्वालाले पोलोस्। स्वर्गलोकमा पनि ज्ञानसित द्वेष गर्नेलाई दुःख होस्।

किमङ्ग त्वा ब्रह्मणः सोम गोपां किमङ्ग त्वाहुरभिशस्तिपां नः।
किमङ्ग नः पश्यसि निद्यमानान् ब्रह्मद्विषे तपुषिं हेतिमस्य ॥३॥

हे सोमदेव ! तिमीलाई मन्त्रको रक्षा गर्ने किन भनिन्छ ? हे प्रिय सोमदेव ! तिमीलाई निन्दकबाट जोगाउने किन भनिन्छ ? तिमी निन्दकलाई देख्छौ। ज्ञानसित द्वेष गर्नेलाई तिमी आफ्ना आयुधले दुःख देऊ।

अवन्तु मामुषसो जायमाना अवन्तु मा सिन्धवः पिन्वमानाः।
अवन्तु मा पर्वतासो ध्रुवासोऽवन्तु मा पितरो देवहूतौ ॥४॥

जल भरिएका नदी, उषा, बलिया पर्वत, पितृहरू र यज्ञमा बोलाउँदा उपस्थित हुने देवशक्तिले हाम्रो रक्षा गरुन्।

विश्वदानीं सुमनसः स्याम पश्येम नु सूर्यमुच्चरन्तम्।
तथा करद्वसुपतिर्वसूनां देवाँ ओहानोऽवसागमिष्ठः ॥५॥

हामी सधैं उत्तम विचार गरौं। हामी सधैं सूर्यदेवको दर्शन गरौं। देवताहरूका निम्ति आहुति वहन गर्ने र धनका अधिपति अग्निदेवले हामीलाई सुरक्षा प्रदान गरुन्।

इन्द्रो नेदिष्ठमवसागमिष्ठः सरस्वती सिन्धुभिः पिन्वमाना।
पर्जन्योन ओषधीभिर्मयोभुरग्निः सुशंसः सहवः पितेव ॥६॥

इन्द्रदेवका रक्षण साधनले र सरस्वतीका उर्लँदो जलले हाम्रो रक्षा गरुन्। पर्जन्यबाट उत्पन्न औषधि र पिताजस्तै अग्निदेवलाई हामी रक्षाका लागि आह्वान गर्दछौं।

विश्वे देवास आ गत शृणुता म इमं हवम्। एदं बर्हिर्नि षीदत ॥७॥

हे विश्वेदेव ! हाम्रो प्रार्थना सुनेर आऊ र ओछ्याएका कुशका आसनमा राम्ररी बस।

यो वो देवा घृतस्नुना हव्येन प्रतिभूषति। तं विश्व उप गच्छथ ॥८॥

हे देवताहरू हो ! घिउसहितको आहुति प्रदान गर्ने याजकको कल्याण गर।

उप नः सूनवो गिरः शृण्वन्त्वमृतस्य ये। सुमृडीका भवन्तु नः ॥९॥

हाम्रो प्रार्थना सुनेर अमरपुत्र देवताहरू हामीकहाँ आऊन् र सुख प्रदान गरुन्।

विश्वे देवा ऋतावृध ऋतुभिर्हवनश्रुतः। जुषन्तां युज्यं पयः ॥१०॥

समस्त देवताहरू सत्यको मार्ग बढाउँछन्। उनीहरू ऋतुअनुसार हवन गर्नका लागि सर्वविदित छन्। उनीहरूले उत्तम दुध स्वीकार गरुन्।

स्तोत्रमिन्द्रो मरुद्‌गणस्त्वष्टृमान् मित्रो अर्यमा। इमा हव्या जुषन्त नः ॥११॥

मरुतहरूसँग इन्द्रदेव, त्वष्टादेव, मित्र, अर्यमा आदि सबै देवताले हाम्रो आहुति र स्तोत्र स्वीकार गरुन्।

इमं नो अग्ने अध्वरं होतर्वयुनशो यज। चिधित्वान्दैव्यं जनम् ॥१२॥

हे होता अग्निदेव ! हाम्रा यस यज्ञमा प्रमुख देवताहरूका लागि सुहाउँदो यज्ञ गर।

विश्वे देवाः शृणुतेमं हवं मे ये अन्तरिक्षे य उप द्यवि ष्ठ।
ये अग्निजिह्वा उत वा यजत्रा आसद्यास्मिन्बर्हिषि मादयध्वम् ॥१३॥

हे विश्वेदेवताहरू हो ! तिमीहरू अन्तरिक्ष वा द्युलोकमा जहाँ भए पनि हाम्रो प्रार्थना सुनेर आओ र कुशका आसनमा बसेर सोम पान गर्दै आनन्दित होओ।

विश्वे देवा मम शृण्वन्तु यज्ञिया उभे रोदसी अपां नपाच्च मन्म।
मा वो वचांसि परिचक्ष्याणि वोचं सुम्नेष्विद्वो अन्तमा मदेम ॥१४॥

पृथ्वी, अन्तरिक्ष र अग्निसहित समस्त देवशक्तिहरू हामीले प्रस्तुत गरेका श्रेष्ठ स्तोत्र सुनून्। हामी कहिल्यै पनि देवतालाई अप्रिय लाग्ने वचन नबोलौं र देवताले दिएका अनुदानबाट खुसी होऔं।

ये के च ज्मा महिनो अहिमाया दिवो जज्ञिरे अपां सधस्थे।
ते अस्मभ्यमिषये विश्वमायुः क्षप उस्रा वरिवस्यन्तु देवाः ॥१५॥

द्युलोक, पृथ्वीलोक र अन्तरिक्षमा आफ्ना महान् कर्मकौशलले युक्त देवताहरू प्रकट होऊन् र हाम्रा पुत्र आदिलाई अन्न एवं पूर्ण आयु प्रदान गरुन्।

अग्नीपर्जन्याववतं धियं मेऽस्मिन्हवे सुहवा सुष्टुतिं नः।
इडामन्यो जनयद् गर्भमन्यः प्रजावतीरिष आ धत्तमस्मे ॥१६॥

हे अग्निदेव र पर्जन्य ! हाम्रा बुद्धिको सुरक्षा गर। हे आह्वान गर्न योग्य देवताहरू हो ! हाम्रो स्तुति सुन। तिमीहरूमध्ये एउटा अन्नदाता र अर्को सन्तानदाता हौ। तिमीहरू प्रसन्न भएर हामीलाई अन्नसहित सन्तान प्रदान गर।

स्तीर्णे बर्हिषि समिधाने अग्नौ सूक्तेन महा नमसा विवासे।
अस्मिन्नो अद्य विदथे यजत्रा विश्वे देवा हविषि मादयध्वम् ॥१७॥

हे देवताहरू हो ! हामी कुशका आसन ओछ्याउँछौं र अग्नि प्रदीप्त गर्दछौं। हामीले मन लगाएर मन्त्र पाठ गरेका बेला हाम्रो आहुति र नमस्कारबाट तिमीहरू खुसी होओ।

[सूक्त - ५३]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - पूषा। **छन्द** - गायत्री अनुष्टुप्।

वयमु त्वा पथस्पते रथं न वाजसातये। धिये पूषन्नयुज्महि ॥१॥

हे पूषादेव ! हामीलाई मार्गमा सुरक्षित गर। अन्नका लागि रथ नियोजित गरेझैं हामी बुद्धिपूर्वक कर्म गर्नका लागि तिम्रा सम्मुख उपस्थित हुन्छौं।

अभि नोनर्यं वसु वीरं प्रयतदक्षिणम्। वामं गृहपतिं नय ॥२॥

हे पूषादेव ! हामीलाई मानिसका हितैषि, पर्याप्त धन दान गर्ने दानवीर र प्रशंसनीय गृहस्थका नजिक लैजाऊ।

अदित्सन्तं चिदाघृणे पूषन्दानाय चोदय। पणेश्चिद्वि म्रदा मनः ॥३॥

हे प्रकाशमान पूषादेव ! कन्जुसलाई दान गर्नमा प्रेरित गर। व्यापारीका कठोर हृदय कोमल बनाऊ।

वि पथो वाजसातये चिनुहि वि मृधो जहि। साधन्तामुग्र नो धियः ॥४॥

हे पूषादेव ! हाम्रा घातक शत्रु नाश गर। हामीलाई धन प्राप्त गर्ने मार्ग बताऊ।

परि तृन्धि पणीनामारया हृदया कवे। अथेमस्मभ्यं रन्धय ॥५॥

हे ज्ञानी पूषादेव ! प्राणीका मनभित्र बस्ने कठोर हृदयलाई शस्त्रले चिरेर हाम्रो अनुकूल बनाऊ।

वि पूषन्नारया तुद पणेरिच्छ हृदि प्रियम्। अथेमस्मभ्यं रन्धय ॥६॥

हे पूषादेव ! आराले प्राणीहरूको हृदय चिरेर त्यहाँ प्रिय भाव भर र हामीलाई वशीभूत गराऊ।

आ रिख किकिरा कृणु पणीनां हृदया कवे। अथेमस्मभ्यं रन्धय ॥७॥

हे पूषादेव ! प्राणीका हृदयको कठोरता मेटाऊ र तिनलाई हाम्रो अधीनमा गराऊ।

यां पूषन्ब्रह्मचोदनीमारां बिभर्ष्याघृणे।
तया समस्य हृदयमा रिख किकिरा कृणु ॥८॥

हे पूषादेव ! ज्ञानद्वारा प्रेरित आराले कन्जुसको हृदय राम्ररी खाली गराएर त्यहाँ समानता भराइदेऊ।

या ते अष्ट्रा गोओपशाघृणे पशुसाधनी। तस्यास्ते सुम्नमीमहे ॥९॥

हे तेजस्वी वीर पूषादेव ! तिमी आफ्ना जुन अस्त्रले पशुलाई प्रेरित गरेर सही मार्गमा चलाउँछौ, उसैबाट हामी पनि आफ्ना कल्याणको कामना गर्दछौं।

उत नो गोषणिं धियमश्वसां वाजसामुत। नृवत् कृणुहि वीतये ॥१०॥

हे पूषादेव ! तिमी हाम्रा यज्ञ आदि कार्यको सफलताका लागि गाई, अश्व, सेवक र अन्न प्रदान गर।

[सूक्त - ५४]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - पूषा। **छन्द** - गायत्री।

सं पूषन् विदुषा नय यो अञ्जसानुशासति। य एवेदमिति ब्रवत् ॥१॥

हे पूषादेव ! हामीलाई तिमी यस्तो मार्गमा पुर्‍याऊ जसले हामीलाई उत्तम मार्ग र धन प्राप्त गर्ने मार्ग देखाओस्।

समु पूष्णा गमेमहि यो गृहाँ अभिशासति। इम एवेति च ब्रवत् ॥२॥

हे पूषादेव ! हामीलाई तिमी यस्ता पुरुषसित भेट गराऊ जसले घरलाई अनुशासित राख्न मार्गदर्शन गराओस्।

पूष्णश्चक्रं न रिष्यति न कोशोऽव पद्यते। नो अस्य व्यथते पविः ॥३॥

पूषादेवको चक्र कहिल्यै दूषित हुँदैन। यसको धार सधैं तिखो नै रहन्छ।

यो अस्मै हविषाविधन्न तं पूषापि मृष्यते। प्रथमो विन्दते वसु ॥४॥

जुन याजकले यस्ता पूषादेवका लागि आहुति प्रदान गर्दछन्, तिनलाई कुनै कष्ट हुँदैन र पूषादेवले तिनलाई कृपा गरेर उत्तम खालको धन प्रदान गर्दछन्।

पूषा गा अन्वेतु नः पूषा रक्षत्वर्वतः। पूषा वाजं सनोतु नः ॥५॥
पूषादेव हाम्रा गाई, घोडा आदिको रक्षा गरुन् र हामीलाई अन्न एवं धन प्रदान गरुन्।

पूषन्ननु प्र गा इहि यजमानस्य सुन्वतः। अस्माकं स्तुवतामुत ॥६॥
हे पूषादेव ! यज्ञ गर्नेहरूलाई र हामी स्तोतालाई सुहाउँदा गाई प्राप्त होऊन्।

माकिर्नेशन्माकीं रिषन्माकीं सं शारि केवटे। अथारिष्टाभिरा गहि ॥७॥
हे पूषादेव ! यज्ञकर्म गर्ने हाम्रा गाई खाडलमा खसेर वा अन्य किसिमले नाश हुन नदेऊ। तिमीबाट सुरक्षित गाई साँझका समयमा हामीकहाँ फर्की आऊन्।

शृण्वन्तं पूषणं वयमिर्यमनष्टवेदसम्। ईशानं राय ईमहे ॥८॥
जसको धन अविनाशी छ, त्यस्ता पूषादेवसित हामी धन माग्दछौं। प्रार्थना सुनेर उनले हाम्रो दरिद्रता नाश गराऊन्।

पूषन्तव व्रते वयं न रिष्येम कदा चन। स्तोतारस्त इह स्मसि ॥९॥
हे पूषादेव ! तिम्रो यजन गर्दै तिम्रो स्तुति गर्ने हामीहरू कहिल्यै नष्ट नहोऔं। अभ्र, पहिलेकै जस्तो गरी सुरक्षित रहौं।

परि पूषा परस्ताद्धस्तं दधातु दक्षिणम्। पुनर्नो नष्टमाजतु ॥१०॥
हे पूषादेव ! तिमी हाम्रा गाईरूपी धनलाई कुमार्गमा लाग्न नदिई नष्ट हुनबाट जोगाऊ र अपहरण भएका गाईरूपी धन पनुः प्राप्त गराऊ।

## [सूक्त - ५५]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - पूषा। छन्द - गायत्री।

एहि वां विमुचो नपादाघृणे सं सचावहै। रथीर्ऋतस्य नो भव ॥१॥
हे पूषादेव ! तिम्रो स्तुति गर्ने स्तोता र तिम्रो यजन गर्ने हामी दुवै मिलेर रहन्छौं। तिमी हामीकहाँ आऊ र यज्ञकर्मको नेतृत्व गर।

रथीतमं कपर्दिनमीशानं राधसो महः। रायः सखायमीमहे ॥२॥
जसका टाउकामा कपाल छ, त्यस्ता महारथी, योद्धा, धनका स्वामी, जो हाम्रा मित्र हुन्, त्यस्ता पूषादेवसित हामी धन माग्दछौं।

रायो धारास्याघृणे वसो राशिरजाश्व। धीवतोधीवतः सखा ॥३॥
हे अजरूपी अश्व भएका देवता ! तिमी धनको प्रवाह र ऐश्वर्यका स्वामी हौ। तिमी स्तुति गर्ने स्तोताहरूका मित्र हौ।

पूषणं न्व१जाश्वमुप स्तोषाम वाजिनम्। स्वसुर्यो जार उच्यते ॥४॥
अश्व र बाख्रा वाहन भएका पूषादेवलाई हामी स्तुति गर्दछौं। उनी उषाका स्वामी हुन्।

मातुर्दिधिषुमब्रवं स्वसुर्जारः शृणोतु नः। भ्रातेन्द्रस्य सखा मम ॥५॥
पूषादेव उषाका पति, सूर्यदेव एवं इन्द्रदेवका भाइ र हाम्रा सखा हुन्। उनी रात्रि माताका सहचर हुन् हामी उनको स्तुति गर्दछौं।

आजासः पूषणं रथे निशृम्भास्ते जनिश्रियम्। देवं वहन्तु बिभ्रतः ॥६॥
मानिसलाई वैभवशाली बनाउने पूषादेवलाई रथमा जोतिएका बाख्राले लिएर आऊन्।

[सूक्त - ५६]

**ऋषि** - भरद्वाज बार्हस्पत्य। **देवता** - इन्द्र पूषा। **छन्द** - त्रिष्टुप् जगती।

**य एनमादिदेशति करम्भादिति पूषणम्। न तेन देव आदिशे ॥१॥**

करम्भ नामको विशेष खाद्यान्न खाने पूषादेवलाई स्तुति गरेपछि कसैले अन्य देवताको स्तुति गर्नुपर्ने आवश्यकता पर्दैन।

**उत घा स रथीतमः सख्या सत्पतिर्युजा। इन्द्रो वृत्राणि जिघ्नते ॥२॥**

वास्तविक श्रेष्ठ रथी उनै पूषादेवका मित्रवत् सहायताले सज्जनका रक्षक इन्द्रदेव शत्रु संहार गर्दछन्।

**उतादः परुषे गवि सूरश्चक्रं हिरण्ययम्। न्यैरयद्रथीतमः ॥३॥**

श्रेष्ठ पूषादेव सूर्यदेवका हिरण्यमय रथका चक्र राम्ररी घुमाउँछन्।

**यदद्य त्वा पुरुष्टुत ब्रवाम दस्र मन्तुमः। तत्सु नो मन्म साधय ॥४॥**

हे पूषादेव ! तिमी धेरै तिरबाट प्रशंसित, दर्शनीय र मननीय छौ। हामी जुन धनका इच्छाले तिम्रो स्तुति गर्दछौं, त्यो हामीलाई प्रदान गर।

**इमं च नो गवेषणं सातये सीषधो गणम्। आरात् पूषन्नसि श्रुतः ॥५॥**

हे पूषादेव ! तिमी नजिक र टाढाबाट प्रसिद्ध छौ। गाई खोज्नेलाई धन प्रदान गर।

**आ ते स्वस्तिमीमह आरे अघामुपावसुम्। अद्या च सर्वतातये श्वश्च सर्वतातये।**

हे पूषादेव ! हामी तिम्रो स्तुति गर्दछौं। त्यसबाट हाम्रो वर्तमान र भविष्य कल्याणकारी होस्। हामीलाई धन प्रदान गर र पापबाट जोगाऊ।

[सूक्त - ५७]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - पूषा। **छन्द** - त्रिष्टुप् जगती।

**इन्द्रा नु पूषणा वयं सख्याय स्वस्तये। हुवेम वाजसातये ॥१॥**

हामी अन्न प्राप्तिका लागि र आफ्नो कल्याणका लागि मित्रस्वरूप इन्द्र र पूषादेवलाई स्तुतिद्वारा बोलाउँछौं।

**सोममन्य उपासदत्पातवे चम्वोः सुतम्। करम्भमन्य इच्छति ॥२॥**

आसनमा बसेका देवताहरूमध्ये इन्द्रदेव पेलेर तयार पारेको सोमरस पान गर्ने विचार गर्दछन् र पूषादेव करम्भ खाने रहर गर्दछन्।

**अजा अन्यस्य वह्नयो हरी अन्यस्य सम्भृता। ताभ्यां वृत्राणि जिघ्नते ॥३॥**

इन्द्रदेवका रथमा घोडा र पूषादेवका रथमा बाख्रा नारिएका छन्। यी दुवै मिलेर वृत्रको नाश गर्दछन्।

**यदिन्द्रो अनयद्रितो महीरपो वृषन्तमः। तत्र पूषाभवत्सचा ॥४॥**

महाबली इन्द्रदेवले वर्षाका रूपमा जल प्रवाहित गराउँदा पोषण गर्नमा समर्थ पूषादेव उनका सहयोगी हुन्छन्।

**तां पूष्णः सुमतिं वयं वृक्षस्य प्र वयामिव। इन्द्रस्य चा रभामहे ॥५॥**

हामी बलियो रुखको हाँगाजस्ता इन्द्रदेव र पूषादेवका आश्रयमा सुरक्षित रहन्छौं।

**उत्पूषणं युवामहेऽभीशूँरिव सारथिः। मह्या इन्द्रं स्वस्तये ॥६॥**

सारथिले लगाम पक्रेझैं आफ्नो महान् कल्याणका लागि हामी पूषादेव र इन्द्रदेवलाई पक्रेर अगाडि बढ्दछौं।

[सूक्त - ५८]

**ऋषि** - बुध भारद्वाज बार्हस्पत्य। **देवता** - इन्द्राग्नि। **छन्द** - बृहती अनुष्टुप्।

**शुक्रं ते अन्यद्यजतं ते अन्यद्विषुरूपे अहनी द्यौरिवासि।**

**विश्वा हि माया अवसि स्वधावो भद्रा ते पूषन्निह रातिरस्तु ॥१॥**

हे पूषादेव ! तिम्रो एउटा सफा रूप दिन हो भने अर्को रूप रात्रि हो। यी दुवै तिम्रा महिमाले उद्भासित छन्। हे पोषणकर्ता पूषादेव ! द्युलोकझैं आभासम्पन्न तिमी सम्पूर्ण जीवजगत्को रक्षा गर्दछौ। तिम्रो कल्याणकारी अनुदान हामीलाई प्राप्त होस्।

अजाश्वः पशुपा वाजपस्त्यो धियञ्जिन्वो भुवने विश्वे अर्पितः।
अष्ट्रां पूषा शिथिरामुद्वरीवृजत्। सञ्चक्षाणो भुवना देव ईयते ॥२॥

बाख्राको वाहन भएका पूषादेव पशुका पोषक हुन्। तिनी अन्नदाता, बुद्धि प्रखर बनाउने, ज्ञानी र समस्त भुवनमा स्थित छन्। पूषादेव सूर्यरूपले समस्त प्राणीका जीवनमा प्रकाश प्रदान गर्दै अन्तरिक्षमा भ्रमण गर्दछन्।

यास्ते पूषन्नावो अन्तः समुद्रे हिरण्ययीरन्तरिक्षे चरन्ति।
ताभिर्यासि दूत्यां सूर्यस्य कामेन कृत श्रव इच्छमानः ॥३॥

हे पूषादेव ! अन्तरिक्षरूपी समुद्रमा तिम्रो सुनौला नौका चल्दै छ। तिमी स्वेच्छाले यशस्वी कर्म गर्दछौ। तिमी सूर्यदेवका दूत हौ। तिम्रो प्रसन्नताका लागि स्तुति गर्दछौं।

पूषा सुबन्धुर्दिव आ पृथिव्या इडस्पतिर्मघवा दस्मवर्चाः।
यं देवासो अददुः सूर्यायै कामेन कृतं तवसं स्वञ्चम् ॥४॥

द्युलोकदेखि पृथ्वीलोकसम्मका सबै प्राणीका असल दाजुभाइजस्ता पूषादेव अन्न र धनका स्वामी हुन्। उनै ऐश्वर्यवान् पुषादेवले उषा प्रकट गर्दछन्। उनी समस्त विश्वलाई प्रकाशित गर्दै हिंड्छन्।

[सूक्त - ५९]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - इन्द्राग्नी। **छन्द** - बृहती अनुष्टुप्।

प्र नु वोचा सुतेषु वां वीर्या३ यानि चक्रथुः।
हतासो वां पितरो देवशत्रव इन्द्राग्नी जीवथो युवम् ॥१॥

हे अमर इन्द्राग्निदेव ! रक्षक भएर तिमीहरूले देवतासित द्वेष गर्नेलाई आफ्नै पराक्रमले नष्ट गरेका हौ। सोम तयार गरेर हामी तिम्रा पराक्रमको बयान गर्दछौं।

बळित्था महिमा वामिन्द्राग्नी पनिष्ठ आ।
समानो वां जनिता भ्रातरा युवं यमाविहेहमातरा ॥२॥

हे इन्द्राग्निदेव ! तिमीहरूको महिमा वास्तवमा सत्य छ। तिमीहरू दुवैका पिता एकै हुनाले जुम्ल्याहा दाजुभाइ हौ र तिमीहरूकी एकै माता यिनै अदिति हुन्।

ओकिवांसा सुते सचाँ अश्वा सप्ती इवादने।
इन्द्रान्व१ग्नी अवसेह वज्रिणा वयं देवा हवामहे ॥३॥

हे इन्द्र र अग्निदेव ! घाँस पाएपछि घोडा खुसी भएझैं तयारी सोमरस पाउँदा तिमीहरू आनन्दित हुन्छौ। हामी आफ्नो रक्षाका लागि तिमीहरूलाई यज्ञमा आह्वान गर्दछौं।

य इन्द्राग्नी सुतेषु वां स्तवत्तेष्वृतावृधा।
जोषवाकं वदतः पज्रहोषिणा न देवा भसथश्चन ॥४॥

हे ऋतका वर्द्धक इन्द्र र अग्निदेव ! सोमरस तयार भइसकेपछि जुन मानिस कुत्सित भावले या स्नेहरहित स्तोत्र प्रयोग गर्दछन्, तिनीहरूको सोम तिमीहरू पिउँदैनौ।

इन्द्राग्नी को अस्य वां देवौ मर्तश्चिकेतति।
विषूचो अश्वान्युयुजान ईयत एकः समान आ रथे ॥५॥

हे इन्द्र र अग्निदेव ! जब तिमीहरू एउटै रथमा चढ्दछौ, घोडा जोतेर विभिन्न दिशामा जान्छौ, त्यस बेला कुन मानिस तिमीहरूका यस्ता कामको रहस्य पूर्ण रूपले बुझ्न सक्ने होला ?

इन्द्राग्नी अपादियं पूर्वागात्पद्वतीभ्यः।
हित्वी शिरो जिह्वया वावदच्चरत्त्रिंशत्पदा न्यक्रमीत् ॥६॥

हे इन्द्र र अग्निदेव ! गोडाविनाकी उषा, गोडा भएका प्रजाभन्दा पहिले नै आउँछिन् र शिर नभए पनि जिब्राले प्रेरणा दिंदै एक दिनमा तीस मुहूर्त वा कदम चल्दछिन्।

इन्द्राग्नी आ हि तन्वते नरो धन्वानि बाह्वोः।
मा नो अस्मिन्महाधने परा वर्क्तं गविष्टिषु ॥७॥

हे इन्द्र र अग्निदेव ! वीर पुरुष धनुषमा हात राखेर सधैं युद्धका लागि तयार रहन्छ। यस्ता वीरले गाई खोज्नका लागि हाम्रो सहायता गरुन्।

इन्द्राग्नी तपन्ति माघा अर्यो अरातयः। अप द्वेषांस्या कृतं युयुतं सूर्यादधि ॥८॥

हे इन्द्र र अग्निदेव ! जुन शत्रुले हामीलाई दुःख दिन्छन्, तिनलाई हामीदेखि तिमी पर राख। ती दुष्टलाई सूर्यका प्रकाशबाट वञ्चित गरेर दण्डित गर।

इन्द्राग्नी युवोरपि वसु दिव्यानि पार्थिवा।
आ न इह प्र यच्छतं रयिं विश्वायुपोषसम् ॥९॥

हे इन्द्र र अग्निदेव ! स्वर्ग र पृथ्वीमा जेजति धन छ, त्यी सबै तिम्रै अधीनमा छ। जुन धनले सबैको पोषण हुन्छ, त्यस्तो धन हामीलाई तिमी प्रदान गर।

इन्द्राग्नी उक्थवाहसा स्तोमेभिर्हवनश्रुता।
विश्वाभिर्गीर्भिरा गतमस्य सोमस्य पीतये ॥१०॥

हे इन्द्र र अग्निदेव ! तिमीहरू सामगान एवं स्तोत्र सुनेर प्रसन्न हुन्छौ। हाम्रो स्तुति सुनेर सोमरस पान गर्नका लागि आओ।

[सूक्त - ६०]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्राग्नी। छन्द - गायत्री त्रिष्टुप्।

श्नथद्वृत्रमुत सनोति वाजमिन्द्रा यो अग्नी सहुरी सपर्यात्।
इरज्यन्ता वसव्यस्य भूरेः सहस्तमा सहसा वाजयन्ता ॥१॥

सूर्योदयका समयमा जुन साधक इन्द्र र अग्निदेवको उपासना गर्दछन्, उनीहरू यी दुवै सामर्थ्यवान् देवताका कृपाले शत्रु नाश गरेर अन्न र धन प्राप्त गर्दछन्।

ता योधिष्टमभि गा इन्द्र नूनमपः स्वरुषसो अग्न ऊढ्हाः।
दिशः स्वरुषस इन्द्र चित्रा अपो गा अग्ने युवसे नियुत्वान् ॥२॥

हे इन्द्र र अग्निदेव ! गाई, जलप्रवाह, प्रकाश र उषालाई बोकेर पर लैजानेसित तिमीहरू लडाइँ गर र तिनीहरूलाई मारिदेओ। आआफ्ना भक्तहरूलाई उत्तम प्रकाश, गाई र उत्तम प्रकारको जल प्रदान गर।

आ वृत्रहणा वृत्रहभिः शुष्मैरिन्द्र यातं नमोभिरग्ने अर्वाक्।
युवं राधोभिरकवेभिरिन्द्राग्ने अस्मे भवतमुत्तमेभिः ॥३॥

हे वृत्रहन्ता इन्द्र र अग्निदेव ! शत्रुलाई नष्ट गर्ने सामर्थ्यका साथ अन्न लिएर तिमीहरू हाम्रा नजिकै आओ। तिमीहरू दुवै अनिन्द्य र श्रेष्ठ धनसहित हामीकहाँ आओ।

ता हुवे ययोरिदं पप्ने विश्वं पुरा कृतम्। इन्द्राग्नी न मर्धतः ॥४॥

विश्वनिर्माणमा उहिलेदेखि नै इन्द्रदेव र अग्निदेवको योगदान छ। उनीहरूलाई प्रशंसा गर्दै हामी आह्वान गर्दछौं। इन्द्र र अग्निदेवले स्तोता र याजकको रक्षा गर्दछन्।

उग्रा विघनिना मृध इन्द्राग्नी हवामहे। ता नो मृळात ईदृशे ॥५॥

उग्र शत्रुलाई सङ्ग्राममा विदीर्ण गराउने, इन्द्र र अग्निदेवलाई हामी आह्वान गर्दछौं। ती दुवै देवताले हामीलाई सफल र सुखी बनाऊन्।

हतो वृत्राण्यार्या हतो दासानि सत्पती। हतो विश्वा अप द्विषः ॥६॥

इन्द्रदेव र अग्निदेव दुष्ट असुरको दुष्टता संहार गर्दै सज्जनको रक्षा गर्दछन्। उनै दुई देवताले सबै शत्रु विनाश गरेका हुन्।

इन्द्राग्नी युवामिमेऽभि स्तोमा अनूषत। पिबतं शम्भुवा सुतम् ॥७॥

हे सुखप्रदाता इन्द्रदेव र अग्निदेव ! यी स्तोताले तिमीहरू दुवैलाई वन्दना गर्दछन्। तिमीहरू दुवै सोमरस पान गर।

या वां सन्ति पुरुस्पृहो नियुतो दाशुषे नरा। इन्द्राग्नी ताभिरा गतम् ॥८॥

जगत्का नायक हे इन्द्रदेव र अग्निदेव ! याजकहरूले प्रशंसा गर्दै प्रदान गरेको हविष्यान्नका लागि तिमीहरू दुवै यज्ञशालामा आफ्ना द्रुतगामी अश्वका सहायताले आओ र दान दाताहरूलाई सहायता गर।

ताभिरा गच्छतं नरोपेदं सवनं सुतम्। इन्द्राग्नी सोमपीतये ॥९॥

हे सृष्टिका नायक इन्द्रदेव र अग्निदेव ! विधिपूर्वक पवित्रता प्राप्त सोमरस पान गर्नका लागि आफ्ना वाहनमा यसका नजिकै आओ।

तमीळिष्व यो अर्चिषा वना विश्वा परिष्वजत्। कृष्णा कृणोति जिह्वया ॥१०॥

अग्निदेवका प्रचण्ड ज्वालाले सारा वन आफ्ना चपेटामा लिएर ज्वालारूपी जिब्राले वन कालो बनाइदिन्छन्। उनै शक्तिशाली अग्निदेवलाई हामी स्तुति गर्दछौं।

य इद्ध आविवासति सुम्नमिन्द्रस्य मर्त्यः। द्युम्नाय सुतरा अपः ॥११॥
प्रज्वलित अग्निमा इन्द्रदेवका लागि आनन्दप्रद आहुति प्रदान गर्ने मानिसको तेज र अन्न वृद्धिका लागि इन्द्रदेव जल वर्षा गराउँछन्।

ता नो वाजवतीरिष आशून्पिपृतमर्वतः। इन्द्रमग्निं च वोढहवे ॥१२॥
हे इन्द्र र अग्निदेव ! तिमीहरू दुवै उन्नतिका लागि शक्तिवर्द्धक अन्न र शीघ्र गतिशील अश्व प्रदान गर।

उभा वामिन्द्राग्नी आहुवध्या उभा राधस सह मादयध्यै।
उभा दाताराविषां रयीणामुभा वाजस्य सातये हुवे वाम् ॥१३॥
हे इन्द्र र अग्नि ! तिमीहरू दुवैलाई हामी आह्वान गर्दछौं। तिमीहरू हामीलाई धन प्रदान गरेर प्रसन्न गर्दछौ। अन्न र धन प्राप्तिका लागि तिमीहरूलाई यज्ञमा आह्वान गर्दछौं।

आ नो गव्येभिरश्व्यैर्वसव्यै३ रुप गच्छतम्।
सखायौ देवौ सख्याय शम्भुवेन्द्राग्नी ता हवामहे ॥१४॥
हे इन्द्र र अग्निदेव ! हामी मित्रताका लागि तिमीहरूलाई बोलाउँछौं। तिमीहरू दुवै मित्रका रूपमा हामीकहाँ गाई, घोडा र धनसहित आओ।

इन्द्राग्नी शृणुतं हवं यजमानस्य सुन्वतः।
वीतं हव्यान्या गतं पिबतं सोम्यं मधु ॥१५॥
हे इन्द्र र अग्निदेव ! तिमीहरू सोमरस तयार गर्ने र यज्ञ गर्नेहरूको स्तुति सुनेर हविको इच्छाले आओ र सोमरस पान गर।

[सूक्त - ६१]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - सरस्वती। छन्द - गायत्री जगती त्रिष्टुप्।

इयमददाद्रभसमृणच्युतं दिवोदासं वध्र्यश्वाय दाशुषे।
या शश्वन्तमाचखादावसं पणिं ता ते दात्राणि तविषा सरस्वति ॥१॥
सरस्वती देवीबाट आहुति दिने वध्र्यश्वले धैर्यवान्, ऋणमुक्त गराउने दिवोदास नामको पुत्र प्राप्त गरे। उनले पणि नामको कष्ट दिने कन्जुसको नाश गरे। हे सरस्वती देवी ! तिम्रो दान महान् छ।

इयं शुष्मेभिर्बिसखा इवारुजत्सानु गिरीणां तविषेभिरूर्मिभिः।
पारावतघ्नीमवसे सुवृक्तिभिः सरस्वतीमा विवासेम धीतिभिः ॥२॥
सरस्वती देवी आफ्ना बलवान् वेगले कमलनालझैं पर्वतका चुचुरा भाँचिदिन्छिन्, हामी उनै सरस्वती देवीलाई भक्ति र सेवा गर्दछौं, उनले हाम्रो रक्षा गरुन्।

सरस्वति देवनिदो निबर्हय प्रजां विश्वस्य बृसयस्य मायिनः।
उत क्षितिभ्योऽवनीरविन्दो विषमेभ्यो अस्रवो वाजिनीवति ॥३॥
हे सरस्वती देवी ! तिमीले देवताको निन्दा गर्नेलाई नष्ट गर्‍यौ। तिमी कपटी दुष्टलाई उसै गरी नाश गर, जसरी तिमीले मानवहितका लागि भूभाग प्रदान गरेकी छ्यौ। हे घोडासवारी गर्ने देवी ! मानिसका लागि तिमीले नै जलप्रवाह गरेकी हौ।

प्र णो देवी सरस्वती वाजेभिर्वाजिनीवती। धीनामवित्र्यवतु ॥४॥
सरस्वती देवी अनेकौं किसिमले अन्नसम्पन्न मानिन्छिन्। उनले रक्षा गर्दछिन् र उनै देवीले हामीलाई उत्तम प्रकारले सन्तुष्ट गराऊन्।

यस्त्वा देवि सरस्वत्युपब्रूते धने हिते। इन्द्रं न वृत्रतूर्ये ॥५॥
युद्धमा शत्रुबाट रक्षा पाउन लागि इन्द्रदेव बोलाइन्छन्, उसै किसिमले युद्धका प्रारम्भमा जसले आह्वान गर्दछ, तिमी त्यसलाई रक्षा गर्दछ्यौ।

त्वं देवि सरस्वत्यवा वाजेषु वाजिनि। रदा पूषेव नः सनिम् ॥६॥
हे सरस्वती देवी ! तिमी बलले युक्त छ्यौ। तिमी सङ्ग्रामका समयमा हाम्रो रक्षा गर र पूषादेवको जस्तै गरी हामीलाई धन प्रदान गर।

उत स्या नः सरस्वती घोरा हिरण्यवर्तनिः वृत्रघ्नी वष्टि सुष्टुतिम् ॥७॥
सुनौलो रथमा आरूढ, प्रचण्ड वीरता धारण गर्ने देवी सरस्वतीले शत्रु नाश गर्दछिन् र स्तोताको रक्षा गर्छिन्।

यस्या अनन्तो अह्रुतस्त्वेषश्चरिष्णुरर्णवः। अमश्चरति रोरुवत् ॥८॥
उनै सरस्वती निरन्तर प्रवाहित जलले वेगका साथ गमन गर्दै गर्जन गर्दछिन्।

सा नो विश्वा अति द्विषः स्वसॄरन्या ऋतावरी। अतन्नहेव सूर्यः ॥९॥
सूर्यदेवले प्रकाश फैलाएझैं सरस्वती देवी शत्रु परास्त गर्दै दिदीबहिनीसँग आउँछिन्।

उत नः प्रिया प्रियासु सप्तस्वसा सुजुष्टा। सरस्वती स्तोम्या भूत् ॥१०॥
प्रियजनमध्ये अति प्रिय, सात बहिनीसँगै सरस्वती देवी हाम्रा निम्ति स्तुत्य छिन्।

आपप्रुषी पार्थिवान्युरु रजो अन्तरिक्षम्। सरस्वती निदस्पातु ॥११॥
स्वर्ग र पृथ्वीमा आफ्नो तेज भरिपूर्ण पार्ने सरस्वतीदेवीले निन्दकबाट जोगाऊन्।

त्रिषधस्था सप्तधातुः पञ्च जाता वर्धयन्ती। वाजेवाजे हव्या भूत ॥१२॥
तीन ठाउँमा रहने, सात धाराका शक्तिले युक्त, पाँचै वर्णका मानिसको उन्नति गराउने सरस्वती नै सङ्ग्रामका समयमा आह्वान गर्न योग्य छिन्।

प्र या महिम्ना महिनासु चेकिते द्युम्नेभिरन्या अपसामपस्तमा।
रथ इव बृहती विभ्वने कृतोपस्तुत्या चिकितुषा सरस्वती ॥१३॥
आफ्नो महत्त्व र तेजको प्रभावका कारण अन्य नदीभन्दा सरस्वती श्रेष्ठ हुन्। अन्य नदीका प्रवाहको अपेक्षा यिनको प्रवाह अधिक तीव्र गतिको रथजस्तै छ। यी गुणवती सरस्वती विद्वान् स्तोताहरूबाट स्तुत्य छिन्।

सरस्वत्यभि नो नेषि वस्यो माप स्फरीः पयसा मा न आ धक्।
जुषस्व नः सख्या वेश्या च मा त्वत्क्षेत्राण्यरणानि गन्म ॥१४॥
हे सरस्वती देवी ! हामीलाई तिमी उत्तम धन प्रदान गर। हामीलाई तिम्रा प्रवाहले दुःख नदियोस्। हाम्रो बन्धुत्व तिमी स्वीकार गर। हामी निकृष्ट स्थानमा नजाऔँ।

[सूक्त - ६२]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

स्तुषे नरा दिवो अस्य प्रसन्ताश्विना हुवे जरमाणो अर्कैः।
या सद्य उस्रा व्युषि ज्मो अन्तान्युयूषतः पर्युरू वरांसि ॥१॥
अदृश्य जगत्लाई प्रकाशित गर्ने अश्विनीकुमारलाई हामी उत्तम स्तोत्रले स्तुति गर्दछौं।

ता यज्ञमा शुचिभिश्चक्रमाणा रथस्य भानुं रुरुचू रजोभिः।
पुरू वरांस्यमिता मिमानापो धन्वान्यति याथो अज्रान् ॥२॥
दुवै अश्विनीकुमार आफ्नो तेज बढाउँदै यज्ञशालामा आएका बेला उनीहरूका तेजले रथ प्रदीप्त हुन्छ। उनीहरू मरुभूमि छोडेर आफ्नो अश्व जलका नजिक लैजान्छन्।

ता ह त्यद्वर्तिर्यदरध्रमुग्रेत्था धिय ऊहथुः शश्वदश्वैः।
मनोजवेभिरिषिरैः शयध्यै परि व्यथिर्दाशुषो मर्त्यस्य ॥३॥
हे अश्विनीकुमार हो ! तिमीहरू मनजस्तै तीव्रगामी, इसारामै हिँड्ने अश्वद्वारा स्तोतालाई स्वर्गसम्म पुऱ्याउँछौ। आहुति प्रदान गर्ने याजकलाई कष्ट दिनेहरूलाई चिरनिद्रामा सुताइदिन्छौ।

ता नव्यसो जरमाणस्य मन्मोप भूषतो युयुजानसप्ती।
शुभं पृक्षमिषमूर्जं वहन्ता होता यक्षत्प्रत्नो अध्रुग् युवाना ॥४॥
द्रोहरहित प्राचीन होता अग्निदेव र दुवै अश्विनीकुमारका लागि हवि अर्पित गर्दछौं। ती दुवै अश्विनीकुमारले स्तोताका नवीन, मनन गर्न योग्य स्तोत्र सुनेपछि पुष्टिदायक र बलवर्द्धक उत्तम अन्न अश्वद्वारा लिएर स्तोताका नजिक पुगिदिऊन्।

ता वल्गू दस्रा पुरुशाकतमा प्रत्ना नव्यसा वचसा विवासे।
या शंसते स्तुवते शम्भविष्ठा बभूवतुर्गृणते चित्रराती ॥५॥
धन र सुख दिने, सुन्दर, शत्रुनाशक, सामर्थ्यवान्, पुरातन अश्विनीकुमारलाई हामी स्तोताहरू नवीन विस्तृत स्तोत्रले स्तुति गर्दछौं।

ता भुज्युं विभिरद्भ्यः समुद्रात्तुग्रस्य सूनुमूहथू रजोभिः।
अरेणुभिर्योजनेभिर्भुजन्ता पतत्रिभिरर्णसो निरुपस्थात् ॥६॥

रक्षा गर्ने दुवै अश्विनीकुमारले तुग्रका पुत्र भुज्युलाई पक्षीझैं वेगवान् रथद्वारा जल भित्रबाट उठाएर धुलो नै नभएको मार्गबाट समुद्रपारि सजिलै लगे।

वि जयुषा रथ्या यातमद्रिं श्रुतं हवं वृषणा वध्रिमत्याः।
दशस्यन्ता शयवे पिप्यथुर्गामिति च्यवाना सुमतिं भुरण्यू ॥७॥

दुवै बलवान् अश्विनीकुमार विजय रथमा आरूढ भएर पर्वत एवं मेघ पार गर्दछन्। उत्तम मति हुनेहरूको प्रार्थना उनीहरू सुनून् र शयुका गाई दुधालु बनाऊन्।

यद्रोदसी प्रदिवो अस्ति भूमा हेडो देवानामुत मर्त्यत्रा।
तदादित्या वसवो रुद्रियासो रक्षोयुजे तपुरघं दधात ॥८॥

द्यावापृथिवी, आदित्यगण, मरुत्गण, दुवै अश्विनीकुमार, वसु आदि देवताले मनुष्यमा हुने भीषण रोषले असुरको संहार गरोस्।

य ईं राजानावृतुथा विदधद्रजसो मित्रो वरुणश्चिकेतत्।
गम्भीराय रक्षसे हेतिमस्य द्रोघाय चिद्वचस आनवाय ॥९॥

अश्विनीकुमारलाई स्तुति गर्ने पवित्र यज्ञकर्म मित्रावरुणदेवले जानेका छन्। याजकहरू असुरलाई आफ्ना अस्त्रले संहार गर्न सक्छन्।

अन्तरैश्चक्रैस्तनयाय वर्तिर्द्युमता यातं नृवता रथेन।
सनुत्येन त्यजसा मर्त्यस्य वनुष्यतामपि शीर्षा ववृक्तम् ॥१०॥

हे अश्विनीकुमारदेव हो ! तिमीहरू रथमा चढेर सन्तानलाई सुख दिनका लागि घरमा आओ। क्रोधले तिरस्कार गर्दै मानिसलाई कष्ट दिने दुष्टहरूको टाउको काटिदेओ।

आ परमाभिरुत मध्यमाभिर्नियुद्भिर्यातमवमाभिरर्वाक्।
दृढस्य चिद् गोमतो वि व्रजस्य दुरो वर्तं गृणते चित्रराती ॥११॥

हे अश्विनीकुमारदेवहरू हो ! तिमीहरूलाई हामी स्तुति गर्दछौं। स्तुति सुनेर तिमीहरू हामीकहाँ आओ। हामीलाई गोठभरि गाई र दिव्य धन प्रदान गर।

## [सूक्त – ६३]

ऋषि – भारद्वाज बार्हस्पत्य। देवता – अश्विनीकुमार। छन्द – त्रिष्टुप्।

क्व१त्या वल्गू पुरुहूताद्य दूतो न स्तोमोऽविदन्नमस्वान्।
आ यो अर्वाङ्नासत्या ववर्त प्रेष्ठा ह्यसथो अस्य मन्मन् ॥१॥

अश्विनीकुमारहरू भएका ठाउँसम्म यो आहुतिसँगै हाम्रो आकर्षक स्तोत्र दूतझैं उनलाई बोलाउन पुगून्। स्तुतिले आनन्दित भएर ती दुवै स्तुत्य देवता हामीतिर आऊन्।

अरं मे गन्तं हवनायास्मै गृणाना यथा पिबाथो अन्धः।
परि ह त्यद्वर्तिर्याथो रिषो न यत्परो नान्तरस्तुतुर्यात् ॥२॥

हे अश्विनीकुमार हो ! तिमीहरू स्तुतिले प्रसन्न भएर हाम्रा घरमा आओ र सोमपान गर। नजिक वा टाढाका शत्रुबाट हाम्रा यस घरको रक्षा गर।

अकारि वामन्धसो वरीमन्नस्तारि बर्हिः सुप्रायणतमम्।
उत्तानहस्तो युवयुर्ववन्दा वां नक्षन्तो अद्रय आञ्जन् ॥३॥

हे दुई अश्विनीकुमार हो ! सोमरस तयार छ। कुशका आसन ओछ्याइएका छन्। हामी स्तोताले तिमीहरूलाई स्तुति गर्दै बोलाएका छौं।

ऊर्ध्वो वामग्निरध्वरेष्वस्थात्प्र रातिरेति जूर्णिनी घृताची।
प्र होता गूर्तमना उराणोऽयुक्त यो नासत्या हवीमन् ॥४॥

हे अश्विनीकुमार हो ! यज्ञशालामा तिमीहरूका निम्ति अग्नि प्रदीप्त छ। घिउले भरेको पात्र अगाडि राखिएको छ। अनेकौं विशेष कार्य गर्न सक्ने दुवै होताहरू मन लगाएर तिमीहरूका लागि आहुति अर्पित गर्दछन्।

अधि श्रिये दुहिता सूर्यस्य रथं तस्थौ पुरुभुजा शतोतिम्।
प्र मायाभिर्मायिना भूतमत्रा नरा नृतू जनिमन्यज्ञियानाम् ॥५॥

हे घुँडासम्म लामा पाखुरा भएका अश्विनीकुमार हो ! सूर्यपुत्री उषा तिमीहरूका अनेकौं किसिमले सुरक्षित रथमा आरूढ भएकी छिन्। तिमीहरू देवसन्तानको नेतृत्व गर।

युवं श्रीभिर्दर्शताभिराभिः शुभे पेष्टिमूहथुः सूर्यायाः।
प्र वां वयो वपुषेऽनु पप्तन्नक्षद्वाणी सुष्टुता धिष्ण्या वाम् ॥६॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै उषाका शोभाले समृद्ध छौ। तिमीहरू आफ्नो र उनको शोभा र कल्याणका लागि रथमा पुष्टिकारक अन्न राख्दछौ। तिमीहरूसम्म हाम्रो स्तुति पुगोस्।

आ वां वयोऽश्वासो वहिष्ठा अभि प्रयो नासत्या वहन्तु।
प्र वां रथो मनोजवा असर्जीषः पृक्ष इषिधो अनु पूर्वीः ॥७॥

हे अश्विनीकुमार हो ! तिमीहरूको तीव्रगामी रथ अन्नका लागि गमन गर्दछ। मनजस्तै गति भएका तिम्रा अश्वले तिमीहरू दुईलाई अन्नका साथ हामीकहाँ ल्याऊन्।

पुरु हि वां पुरुभुजा देष्णं धेनुं नइषं पिन्वतमसक्राम्।
स्तुतश्च वां माध्वी सुष्टुतिश्च रसाश्च ये वामनु रातिमग्मन् ॥८॥

हे अश्विनीकुमार हो ! तिमीहरू ठूला पाखुरा भएका छौ। तिमीहरूसित असीमित धन छ। हामीलाई तिमीहरू स्थिर मन भएका गाई र अन्न देओ। तिमीहरूका लागि मधुर सोमरस तयार छ। स्तोताले तिमीहरूको स्तुति गर्दछन्।

उत म ऋज्रे पुरयस्य रघ्वी सुमीढहे शतं पेरुके च पक्वा।
शाण्डो दाद्धिरणिनः स्मद्दिष्टीन् दश वशासो अभिषाच ऋष्वान् ॥९॥

पुरय भनिने सहरका नेताका दुई वटा द्रुतगामी अश्वी, सय गाई, पेरुक भनिने पकाइएको अन्न र फल आदि पदार्थ हामीलाई प्राप्त होस्। शान्तिप्रद शाण्डले दिएका स्वर्ण अलङ्कारले सजिएका, दर्शनीय, शत्रुजयी दस वटा रथ हामीसँग छन्।

सं वां शता नासत्या सहस्राश्वानां पुरुपन्था गिरे दात्।
भरद्वाजाय वीर नू गिरे दाद्धता रक्षांसि पुरुदंससा स्युः ॥१०॥

हे अश्विनीकुमार हो ! तिमीहरूका स्तोतालाई पुरूपन्था राजाले सयौं वा हजारौं घोडा दिए। हे देवताहरू हो ! यो सबै तिमी भरद्वाजलाई प्रदान गर र असुर नाश गर।

आ वां सुम्ने वरिमन्त्सूरिभिः ष्याम् ॥११॥

हे अश्विनीकुमार हो ! तिमीहरूका कृपाले हामी श्रेष्ठ विद्वान्सँग सुखपूर्वक रहौं।

## [सूक्त - ६४]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - उषा। **छन्द** - त्रिष्टुप्।

उदु श्रिय उषसो रोचमाना अस्थुरपां नोर्मयो रुशन्तः।
कृणोति विश्वा सुपथा सुगान्यभूदु वस्वी दक्षिणा मघोनी ॥१॥

उषाहरू उज्यालो वर्णका छन्। यिनीहरू जलको लहरझैं टल्कँदै माथितिर आउँछन्। उषाहरू धनऐश्वर्यले सम्पन्न छन्। यिनीहरू सबै मार्ग प्रकाशित गरेर सरलताका साथ गमन योग्य बनाउँछन्।

भद्रा ददृक्ष उर्विया वि भास्युत्ते शोचिर्भानवो द्यामपप्तन्।
आविर्वक्षः कृणुषे शुम्भमानोषो देवि रोचमाना महोभिः ॥२॥

हे उषादेवी ! तिमी कल्याणकारिणी देखिन्छ्यौ। तिम्रो किरण आभामय छ। हे दिव्य उषादेवी ! तिमी चम्कँदा किरणले सुशोभित आफ्नो अन्तःकरण प्रकट गरेर प्रकाश प्रदान गर्दै सबैको कल्याण गर्दछ्यौ।

वहन्ति सीमरुणासो रुशन्तो गावः सुभगामुर्विया प्रथानाम्।
अपेजते शूरो अस्तेव शत्रून् बाधते तमो अजिरो न वोळ्हा ॥३॥

हे उषादेवी रातो आभायुक्त तेजस्वी रश्मिले तिमीलाई बोकेर माथि ल्याउँछ। घोडामा चढेर अचुक बाण चलाउने शूरवीरले शत्रु भगाएझैं तिमी अन्धकार भगाउँछ्यौ।

सुगोत ते सुपथा पर्वतेष्ववाते अपस्तरसि स्वभानो।
सा न आ वह पृथुयामन्नृष्वे रयिं दिवो दुहितरिषयध्यै ॥४॥

हे उषादेवी ! तिमी स्वयं प्रकाशित भएर अन्तरिक्षमा विचरण गर्दछ्यौ। त्यस बेला तिम्रा लागि मार्गविहीन पर्वतीय प्रदेशहरू पनि सुगम हुन्छन्। हे स्वर्गलोकको कन्या ! तिमी ठूलो रथमा हाम्रा लागि धन ल्याइदेऊ।

सा वह योक्षभिरवातोषो वरं वहसि जोषमनु।
त्वं दिवो दुहितर्या ह देवी पूर्वहूतौ मंहना दर्शता भूः ॥५॥

हे स्वर्गकी कन्या उषादेवी ! तिमी पहिलो सवन कालमा नै दर्शनीय र पूजनीय छ्यौ। तीव्रगामी, इच्छाअनुसार चल्ने, गोरुले तानेका रथमा हामीलाई श्रेष्ठ धन ल्याइदेऊ।

उत्ते वयश्चिद्वसतेरपप्तन्नरश्च ये पितुभाजो व्युष्टौ।
अमा सते वहसि भूरि वाममुषो देवि दाशुषे मर्त्याय ॥६॥

हे उषादेवी ! तिमी प्रकाशित भएपछि चराहरू आफ्ना गुँडबाट बाहिर आउँछन् र अन्न उपार्जन गर्नेहरू पनि जागेर आआफ्ना काममा लाग्दछन्। हे उषादेवी ! जुन मानिस तिमी प्रकट हुँदा सँगै रहन्छ, उसलाई मनग्गे धन प्राप्त हुन्छ।

[सूक्त - ६५]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - उषा। छन्द - त्रिष्टुप्।

एषा स्या नो दुहिता दिवोजाः क्षितीरुच्छन्ती मानुषीरजीगः।
या भानुना रुशता राम्यास्वज्ञायि तिरस्तमसश्चिदक्तून् ॥१॥

स्वर्गमा उत्पन्न भएकी दिव्य कन्यारूपी उषादेवीले आफ्ना तेजस्वी प्रकाश रश्मिद्वारा अन्धकार हटाउँदै मानवका सन्तानलाई जगाउँछिन्।

वि तद्ययुररुणयुग्भिरश्वैश्चित्रं भान्त्युषसश्चन्द्ररथाः।
अग्रं यज्ञस्य बृहतो नयन्तीर्वि ता बाधन्ते तम ऊर्म्यायाः ॥२॥

अरुण अश्व भएका विशाल रथमा बसेकी उषादेवी यज्ञभन्दा पहिले विशेष गतिले अन्तरिक्षमा विचरण गर्दछिन्। उनी आफ्ना विलक्षण प्रकाशले अन्धकार नष्ट गर्दछिन्।

श्रवो वाजमिषमूर्जं वहन्तीर्नि दाशुष उषसो मर्त्याय।
मघोनीर्वीरवत्पत्यमाना अवो धात विधते रत्नमद्य ॥३॥

धनवान् र उत्तम गतिले गमन गर्ने उषाहरू हव्य प्रदान गर्नेलाई अन्न, बल, यश र रस प्रदान गर्दछन्। हे उषा ! हामीलाई अन्न र सेवा गर्ने वीर पुत्ररूपी रत्न आजै प्रदान गर।

इदा हि वो विधते रत्नमस्तीदा वीराय दाशुष उषासः।
इदा विप्राय जरते यदुक्था नि ष्म मावते वहथा पुरा चित् ॥४॥

हे उषाहरू हो ! उहिले आफ्ना स्तोतालाई धन प्रदान गरेझैं यस बेला पनि हविदाता र स्तोतालाई तिमीहरूसित भएका रत्न प्रदान गर।

इदा हि त उषो अद्रिसानो गोत्रा गवामङ्गिरसो गृणन्ति।
व्य१र्केण बिभिदुर्ब्रह्मणा च सत्या नृणामभवद्देवहूतिः ॥५॥

हे पर्वतका चुचुरामा देखिने उषादेवी ! तिम्रा कृपाले नै अङ्गिराहरूले गाईको बथान फेला पारेका हुन्। मानिसको ईश्वरप्रतिको प्रार्थना अब सफल भएको छ।

उच्छा दिवो दुहितः प्रत्नवन्नो भरद्वाजवद्विधते मघोनि।
सुवीरं रयिं गृणते रिरीह्युरुगायमधि धेहि श्रवो नः ॥६॥

हे सूर्यपुत्री उषा ! तिमी उहिलेको जस्तै अहिले पनि अन्धकार हटाऊ। तिमीले भरद्वाज दिएको जस्तै हामी स्तोतालाई पनि असल पुत्रसहितको अन्न र धन प्रदान गर।

[सूक्त - ६६]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - मरुद्गण। छन्द - त्रिष्टुप्।

वपुर्नु तच्चिकितुषे चिदस्तु समानं नाम धेनु पत्यमानम्।
मर्तेष्वन्यद्दोहसे पीपाय सकृच्छुक्रं दुदुहे पृश्निरूधः ॥१॥

ज्ञानीहरूले उसलाई समान धेनुका नामले चिनेका छन्। एकलाई मानिसका लागि दुहुने गरिन्छ भने अर्कोको तेजस्वी रूप दुधका रूपमा अन्तरिक्षबाट झर्ने गर्दछ।

ये अग्नयो न शोशुचन्निधाना द्विर्यत्रिर्मरुतो वावृधन्त।
अरेणवो हिरण्ययास एषां साकं नृम्णैः पौंस्येभिश्च भूवन् ॥२॥

स्वेच्छाले बढ्ने अग्निदेवजस्ता तेजस्वी र स्वर्णाभूषणले अलङ्कृत मरुत्‌हरू धन र बलका साथमा प्रकट हुन्छन्।

रुद्रस्य ये मीळ्हुषः सन्ति पुत्रा यांश्चो नु दाधृविर्भरध्यै।
विदेहि माता महो मही षा सेत्पृश्निः सुभ्वे३ गर्भमाधात् ॥३॥

अन्तरिक्षमा रहने मरुत्‌हरूका पिता रुद्र र माता महिमाशालिनी पृथ्वी हुन्। पृथ्वीले नै सबैको कल्याणका लागि जल र अन्न आफ्ना गर्भमा धारण गर्दछिन्।

न य ईषन्ते जनुषोऽया न्वन्तः सन्तोऽवद्यानि पुनानाः।
निर्यद् दुह्रे शुचयोऽनु जोषमनु श्रिया तन्वमुक्षमाणाः ॥४॥

मानिसहरू टाढा नगएर मरुत्‌हरूका अन्तःकरणमा निवास गर्दछन् र दोष मेटाउँदै पवित्र बन्दछन्। मरुत्‌हरू आफ्ना तेजले इच्छाअनुसार शरीर बलवान् बनाउँछन्। पवित्र, वीर मरुत्‌हरू इच्छाअनुसार जलको वर्षा गर्दछन्।

मक्षू न येषु दोहसे चिदया आ नाम धृष्णु मारुतं दधानाः।
न ये स्तौना अयासो मह्ना नू चित्सुदानुरव यासदुग्रान् ॥५॥

जुन शूरवीरको नाम नै मरुत्‌गण छ, तिनीहरू स्तोतालाई पोषणका लागि उत्तम धन प्रदान गर्दछन्। उनीहरू आफ्ना उग्र क्रोधले चोर र दस्यु परास्त गर्दै नाश गर्दछन्।

त इदुग्राः शवसा धृष्णुषेणा उभे युजन्त रोदसी सुमेके।
अध स्मैषु रोदसी स्वशोचिरामवत्सु तस्थौ न रोकः ॥६॥

मरुत्‌हरू महान् वीर छन्। द्यावापृथिवीमा उनका साहसी सेना सुसज्जित हुन्छन्। यी स्वदीप्तिले तेजस्वी छन्। यिनका मार्गमा कसैले बाधा हाल्न सक्दैन।

अनेनो वो मरुतो यामो अस्त्वनश्वश्चिद्यमजत्यरथीः।
अनवसो अनभीशू रजस्तूर्वि रोदसी पथ्या याति साधन् ॥७॥

हे मरुत्‌हरू हो ! अश्वरहित, विनासारथि, विनालगाम, दोषरहित, जल प्रदान गर्ने तिमीहरूको रथ द्यावापृथिवी र अन्तरिक्षमा विचरण गर्दछ।

नास्य वर्ता न तरुता न्वस्ति मरुतो यमवथ वाजसातौ।
तोके वा गोषु तनये यमप्सु स व्रजं दर्ता पार्ये अध द्योः ॥८॥

हे मरुत्‌हरू हो ! सङ्ग्राममा जसका रक्षक तिमीहरू हुन्छौ, तिनलाई कसैले मार्न सक्दैन। पुत्रसहित तिमीहरू जसका रक्षक हौ, त्यसले शत्रुका गाई जित्न सक्दछ।

प्र चित्रमर्कं गृणते तुराय मारुताय स्वतवसे भरध्वम्।
ये सहांसि सहसा सहन्ते रेजते अग्ने पृथिवी मखेभ्यः ॥९॥

हे अग्निदेव ! मरुत्‌गण आफ्ना बलपराक्रमले शत्रु परास्त गर्दछन्। उनका हलचलले पृथ्वी काँप्न थाल्दछ। उनै तीव्रगामी, बलवान्, वीर मरुत्‌हरूका लागि नै स्तोताहरू अद्‌भुत स्तोत्रले स्तुति गर्दछन्।

त्विषीमन्तो अध्वरस्येव दिद्युत्तृषुच्यवसो जुह्वो३ नाग्नेः।
अर्चत्रयो धुनयो न वीरा भ्राजज्जन्मानो मरुतो अधृष्टाः ॥१०॥

अग्निजस्तो प्रदीप्त रहने, शत्रुलाई कँपाउने र यज्ञजस्तै तेजस्वी मरुत्‌हरू कहिल्यै पराजित हुँदैनन्।

तं वृधन्तं मारुतं भ्राजदृष्टिं रुद्रस्य सूनुं हवसा विवासे।
दिवः शर्धाय शुचयो मनीषा गिरयो नाप उग्रा अस्पृध्रन् ॥११॥

हामी शस्त्रधारी, पराक्रमी रुद्रपुत्र मरुत्‌हरूको स्तुति गर्दछौँ। यो स्तुति बलवान् भएर मरुत्‌हरूलाई अरू धेरै बल प्रदान गर्दछ।

[सूक्त - ६७]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - मित्रावरुण। छन्द - त्रिष्टुप्।

विश्वेषां वः सतां ज्येष्ठतमा गीर्भिर्मित्रावरुणा वावृधध्यै।
सं या रश्मेव यमतुर्यमिष्ठा द्वा जनाँ असमा बाहुभिः स्वैः ॥१॥

हे सर्वश्रेष्ठ मित्र र वरुणदेवता हो ! तिमीहरूलाई हामी स्तुति गर्दछौं। तिमीहरू आफ्ना बाहुबलले सबै मानिसलाई अनुशासित गर्दछौ।

इयं मद्वां प्र स्तृणीते मनीषोप प्रिया नमसा बर्हिरच्छ।
यन्तं नो मित्रावरुणावधृष्टं छर्दिर्यद्वां वरूथ्यं सुदानू ॥२॥

हे मित्रावरुण हो ! हामी स्तोताले गर्ने स्तुतिले तिमीहरूलाई प्रवृद्ध गराउँछ। तिमीहरूका लागि हामीले कुशका आसन ओछ्याएका छौं। प्रसन्न भएर हामीलाई रक्षा हुन सक्ने खालको निवास प्रदान गर।

आ यातं मित्रावरुणा सुशस्त्युप प्रिया नमसा हूयमाना।
सं यावप्नः स्थो अपसेव जनाञ्छ्रुधीयतश्चिद्यतथो महित्वा ॥३॥

हे मित्रावरुणदेव हो ! हामी नमस्कारपूर्वक तिमीहरूलाई आह्वान र स्तुति गर्दछौं। तिमीहरू आएर जसरी सत्कर्ममा प्रवृत्त रहन्छौ, उसै गरी हामीलाई धन र अन्न प्राप्तिका लागि प्रयत्नशील एवं सन्तुष्ट गराओ।

अश्वा न या वाजिना पूतबन्धू ऋता यद् गर्भमदितिर्भरध्यै।
प्र या महि महान्ता जायमाना घोरा मर्ताय रिपवे नि दीधः ॥४॥

माता अदितिले गर्भमा धारण गरेर सत्य स्वरूप, बलवान्, पवित्र, दाजुभाइका रूपमा तिमीहरूलाई हुर्काइन्। त्यसै कारणले तिमीहरू उत्पन्न हुनासाथ शत्रु संहार गर्ने र श्रेष्ठभन्दा पनि अति श्रेष्ठ बनेका छौ।

विश्वे यद्वां मंहना मन्दमानाः क्षत्रं देवासो अदधुः सजोषाः।
परि यद्भूथो रोदसी चिदुर्वी सन्ति स्पशो अदब्धासो अमूराः ॥५॥

तिम्रै महानताका कारण आनन्दित भएर देवताहरू प्रीतिपूर्वक क्षात्रबल धारण गर्दछन्। त्यस बेला तिमीहरू सबै तिरबाट आकाश र पृथिवीलाई ओगट्छौ। तिमीहरू कसैसित पनि दमित हुँदैनौ।

ता हि क्षत्रं धारयेथे अनु द्यून् दृंहेथे सानुमुपमादिव द्योः।
दृळ्हो नक्षत्र उत विश्वदेवो भूमिमातान्द्यां धासिनायोः ॥६॥

यी दुई देवताहरू अन्तरिक्ष, सूर्य र नक्षत्रलाई दृढताका साथ धारण गर्दछन्। यिनीहरू प्रतिदिन क्षात्रतेज बढाइरहन्छन्। मानिसलाई मनग्गे अन्न प्राप्त होस् भनेर द्यावा-पृथिवीलाई विस्तृत गराउँछन्।

ता विग्रं धैथे जठरं पृणध्या आ यत्सद्म सभृतयः पृणन्ति।
न मृष्यन्ते युवतयोऽवाता वि यत्पयो विश्वजिन्वा भरन्ते ॥७॥

हे मित्रावरुणदेव हो ! याजकहरूले यज्ञशाला तयार गरेपछि तिमीहरू पेट पूरा गर्नका लागि-नै आदरपूर्वक पठाइएको अन्नरूपी सोम धारण गर्दछौ। स्वभावैले प्रसन्न भएर तिमीहरू नदीलाई जलले भराइदिन्छौ, त्यसो भएपछि धुलो उड्दैन।

ता जिह्वया सदमेदं सुमेधा आ यद्वां सत्यो अरतिर्ऋते भूत्।
तद्वां महित्वं घृतान्नावस्तु युवं दाशुषे वि चयिष्टमंहः ॥८॥

मेधावीहरूका वाणीले तिमीहरूसित जल माग्दछ। यजनकर्ता सत्य मार्गमा लागेझैं तिमीहरू महिमावान् हवि प्रदान गर्नेको पाप नाश गराउँछौ।

प्र यद्वां मित्रावरुणा स्पूर्धन्प्रिया धाम युवधिता मिनन्ति।
न ये देवास ओहसा न मर्ता अयज्ञसाचो अप्यो न पुत्राः ॥९॥

तिमीहरूका प्रिय धाम र नियममा बाधा उत्पन्न गराउने, यज्ञ नगरेर द्वेष गर्ने, स्तुति नगर्ने र यज्ञ नगर्नेहरू न मानिस हुन्, न देवता। तिनीहरूलाई संहार गर।

वि यद्वाचं कीस्तासो भरन्ते शंसन्ति के चिन्निविदो मनानाः।
आद्वां ब्रवाम सत्यान्युक्था नकिर्देवेभिर्यतथो महित्वा ॥१०॥

कुनै स्तोता वाणीले र कुनै विद्वान् मनले तिमीहरूलाई सन्तुष्ट गराउँछन्। वास्तवमा तिमीहरूको महिमा अतुलनीय छ भन्ने कुरो नै हामी सत्य ठान्दछौं।

अवोरित्था वां छर्दिषो अभिष्टौ युवोर्मित्रावरुणावस्कृधोयु।
अनु यद् गावः स्फुरानृजिप्यं धृष्णुं यद्रणे वृषणं युनजन् ॥११॥

हे मित्र र वरुणदेवता हो ! हामी स्तोताहरू स्तुति गरेर तिमीहरूका लागि सोमरस प्रस्तुत गर्दछौं। त्यस बेला तिमीहरू आफ्ना आश्रयमा रहने भक्तलाई गाईले भरिएको गोठ र सुरक्षित निवास प्रदान गर्दछौं।

[सूक्त - ६८]

ऋषि – भारद्वाज बार्हस्पत्य। देवता – इन्द्रावरुण। छन्द – त्रिष्टुप् जगती।

श्रुष्टी वां उद्यतः सजोषा मनुष्वद् वृक्तबर्हिषो यजध्यै।
आ य इन्द्रावरुणाविषे अद्य महे सुम्नाय मह आववर्तत् ॥१॥

हे इन्द्र र वरुणदेवता ! उद्यमी मानिस धेरै आसन ओछ्याएर सुन प्राप्तिको महान् उद्देश्य पूर्तिका लागि यज्ञ गर्दछन्। उसै किसिमको इच्छा पूर्तिका लागि आज तिमीहरूको यो यज्ञ उत्सापूर्वक गरिँदै छ।

ता हि श्रेष्ठा देवताता तुजा शूराणां शविष्ठा ता हि भूतम्।
मघोनां मंहिष्ठा तुविशुष्म ऋतेन वृत्रतुरा सर्वसेना ॥२॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू यज्ञ गरिने देवताहरूमा सर्वश्रेष्ठ हौ। तिमीहरू बल र महान् धनले युक्त छौ। तिमीहरू सेना र ऐश्वर्यले सम्पन्न छौ। तिमीहरू दाताहरूमा श्रेष्ठ छौ र शत्रु संहार गर्दछौ।

ता गृणीहि नमस्येभिः शूषैः सुम्नेभिरिन्द्रावरुणा चकाना।
वज्रेणान्यः शवसा हन्ति वृत्रं सिषक्त्यन्यो वृजनेषु विप्रः ॥३॥

हे स्तोताहरू हो ! इन्द्र र वरुण दुवैलाई नमस्कारपूर्वक, बलवर्द्धक स्तोत्रले स्तुति गर। इन्द्रदेवले वज्र फ्याँकेर वृत्रासुर मार्दछन् र वरुणदेव सङ्कटका समयमा बल लगाएर रक्षा गर्दछन्।

ग्नाश्च यन्नरश्च वावृधन्त विश्वे देवासो नरां स्वगूर्ताः।
प्रैभ्य इन्द्रावरुणा महित्वा द्यौश्च पृथिवि भूतमुर्वी ॥४॥

समस्त स्त्री, पुरुष, देवता र द्यावापृथिवी आफ्ना उद्यमले जतिसुकै अगाडि बढेका होऊन्, तर इन्द्र र वरुण दुवै देवताहरू तिनीहरूभन्दा श्रेष्ठ छन्।

स इत्सुदानुः स्ववाँ ऋतावेन्द्रा यो वां वरुण दाशति त्मन्।
इषा स द्विषस्तरेद्दास्वान्वंसद् रयिं रयिवतश्च जनान् ॥५॥

हे इन्द्र र वरुणदेव ! तिमीहरूलाई हवि प्रदान गर्ने याजकहरू दान गर्ने बानीका र धनवान् हुन्छन्। ती यज्ञ गर्नेहरू तिमीहरूका कृपाले सुरक्षित रहेर धन र ऐश्वर्ययुक्त पुत्र प्राप्त गर्दछन्।

यं युवं दाश्वध्वराय देवा रयिं धत्थो वसुमन्तं पुरुक्षुम्।
अस्मे स इन्द्रावरुणावपि ष्यात्प्र यो भनक्ति वनुषामशस्तीः ॥६॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू हविदातालाई जस्तो धन दिन्छौ, जुन धन तिमीहरूबाट सुरक्षित हुन्छ, त्यस्तै सुरक्षित धन हामीलाई प्रदान गर र त्यसैबाट हामी आफ्नो निन्दा गर्नेलाई पर हटाउन सकौं।

उत नः सुत्रात्रो देवगोपाः सूरिभ्य इन्द्रावरुणा रयिः ष्यात्।
येषां शुष्मः पृतनासु साह्वान्प्र सद्यो द्युम्ना तिरते ततुरिः ॥७॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू दुवै महान् बलशाली छौ। हामी तिमीहरूका स्तोता हौं। देवताहरूले रक्षा गरेको तिमीहरूको धन हामीलाई प्राप्त होस्। हामी त्यस सुरक्षित धनका बलले शत्रुलाई तिरस्कृत गरेर जित्दछौं।

नू न इन्द्रावरुणा गृणाना पृङ्क्तं रयिं सौश्रवसाय देवा।
इत्था गृणन्तो महिनस्य शर्धोऽपो न नावा दुरिता तरेम ॥८॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू दुवै बलवान् छौ। हामी तिमीहरूको स्तुति गर्दछौं। हामीलाई तिमीहरू यश प्राप्त गराउने धन प्रदान गर। नौकाले जलराशि पार गरेझैं तिमीहरूका कृपाले हामी पापबाट तर्न सकौं।

प्र सम्राजे बृहते मन्म नु प्रियमर्च देवाय वरुणाय सप्रथः।
अयं य उर्वी महिना महिव्रतः क्रत्वा विभात्यजरो न शोचिषा ॥९॥

हे मानिसहरू हो ! महान, तेजस्वी, अजर र ठूलो कार्य गर्ने वरुणदेव हुन्। वरुणदेव आफ्ना प्रकाशले पृथ्वी प्रकाशित गर्दछन्। मननीय स्तोत्रले उनको स्तुति गर।

इन्द्रावरुणा सुतपाविमं सुतं सोमं पिबतं मद्यं धृतव्रता।
युवो रथो अध्वरं देववीतये प्रति स्वसरमुप याति पीतये ॥१०॥

हे सोमपान गर्ने इन्द्रदेव र वरुणदेव ! तिमीहरू दुवै हर्षित गराउने सोमरस पान गर। तिमीहरूको रथ सोमपान गरेर देवताहरूलाई सन्तुष्ट गर्न प्रत्येक यज्ञमा जान्छ।

इन्द्रावरुण मधुमत्तमस्य वृष्णः सोमस्य वृषणा वृषेथाम्।
इदं वामन्धः परिषिक्तमस्मे आसद्यास्मिन्बर्हिषि मादयेथाम् ॥११॥

हे बलवान् इन्द्र र वरुणदेव हो ! तिमीहरू यस बलयुक्त, अति मधुर, आनन्दवर्द्धक सोमरस पान गर। तिमीहरू दुवै कुशका आसनमा बस र आफ्ना लागि तयार सोमरस ग्रहण गरेर हर्षित होओ।

## [सूक्त - ६९]

**ऋषि** - भारद्वाज बार्हस्पत्य। **देवता** - इन्द्रविष्णु। **छन्द** - त्रिष्टुप्।

सं वां कर्मणा समिषा हिनोमीन्द्राविष्णू अपसस्पारे अस्य।
जुषेथां यज्ञं द्रविणं च धत्तमरिष्टैर्नः पथिभिः पारयन्ता ॥१॥

हे इन्द्रदेव र विष्णुदेव ! तिमीहरूका लागि हामी हवि र उत्तम स्तोत्र प्रेषित गर्दछौं। तिमीहरू प्रसन्न भएर यज्ञमा आओ र हामीलाई धन प्रदान गर।

या विश्वासां जनितारा मतीनामिन्द्राविष्णू कलशा सोमधाना।
प्र वां गिरः शस्यमाना अवन्तु प्र स्तोमासो गीयमानासो अर्कैः ॥२॥

हे इन्द्रदेव र विष्णुदेव ! तिमीहरू समस्त विश्वमा सद्बुद्धिका प्रेरक हौ। तिमीहरूका लागि सोमरसले भरिएको पात्र राखिएको छ। तिमीहरूलाई स्तुतिले प्रसन्न गराओस्, हाम्रो रक्षा गर।

इन्द्राविष्णू मदपती मदानामा सोमं यातं द्रविणो दधाना।
सं वामञ्जन्त्वक्तुभिर्मतीनां सं स्तोमासः शस्यमानास उक्थैः ॥३॥

हे इन्द्रदेव र विष्णुदेव ! तिमीहरू दुवै सोमका स्वामी हौ। तिमीहरू हाम्रा लागि धन लिएर यस यज्ञमा आओ। स्तोत्रले तिमीहरूलाई उन्नति गराओस्।

आ वामश्वासो अभिमातिषाह इन्द्राविष्णू सधमादो वहन्तु।
जुषेथां विश्वा हवना मतीनामुप ब्रह्माणि शृणुतं गिरो मे ॥४॥

हे इन्द्रदेव र विष्णुदेव ! हिंसकहरूलाई परास्त गर्ने घोडाले तिमीहरूलाई ल्याऊन्। तिमीहरू हाम्रो स्तुति सुन र हाम्रा प्रार्थनामा ध्यान देओ।

इन्द्राविष्णू तत्पनयाय्यं वां सोमस्य मद उरु चक्रमाथे।
अकृणुतमन्तरिक्षं वरीयोऽप्रथतं जीवसे नो रजांसि ॥५॥

हे इन्द्रदेव र विष्णुदेव ! सोमपानले हर्षित भएर तिमीहरूले विस्तृत विश्वलाई आवृत्त गरेका छौ र हाम्रा जीवनका लागि संसार प्रकट गरेका छौ।

इन्द्राविष्णू हविषा वावृधानाग्राद्वाना नमसा रातहव्या।
घृतासुती द्रविणं धत्तमस्मे समुद्रः स्थः कलशः सोमधानः ॥६॥

हे इन्द्रदेव र विष्णुदेव ! तिमीहरू सोमपानले बढ्दछौ। यजमानहरू तिमीहरूका लागि नमस्कारसहित हवि प्रदान गर्दछन्। तिमीहरू हामीलाई धन देओ। तिमीहरू समुद्रजस्तै गम्भीर छौ। यो कलश सोमले परिपूर्ण भएझैं तिमीहरू पनि परिपूर्ण होओ।

इन्द्राविष्णू पिबतं मध्वो अस्य सोमस्य दस्रा जठरं पृणेथाम्।
आ वामन्धांसि मदिराण्यग्मन्नुप ब्रह्माणि शृणुतं हवं मे ॥७॥

हे इन्द्रदेव र विष्णुदेव ! तिमीहरू सन्तुष्ट होउन्जेल सोमरस पेटमा थन्क्याओ। खुसी प्रदान गर्ने सोम तिमीहरूकहाँ पुगोस्। हाम्रो प्रार्थना र स्तोत्र ध्यान दिएर सुन।

उभा जिग्यथुर्न परा जयेथे न परा जिग्ये कतरश्चनैनोः।
इन्द्रश्च विष्णो यदपस्पृधेथां त्रेधा सहस्रं वि तदैरयेथाम् ॥८॥

हे इन्द्रदेव र विष्णुदेव ! तिमीहरू दुवै कहिल्यै पराजित नहुने खालका अजेय छौ, तर जब आपसमा नै होड गर्न थाल्दछौ, त्यस बेला सारा भुवन नै काँप्न थाल्दछन्।

[सूक्त - ७०]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - द्यावापृथिवी। छन्द - जगती।

घृतवती भुवनानामभिश्रियोर्वी पृथ्वी मधुदुघे सुपेशसा।
द्यावापृथिवी वरुणस्य धर्मणा विष्कभिते अजरे भूरिरेतसा ॥१॥

हे द्युलोक र पृथिवीलोक ! जलयुक्त सुन्दर रूप भएका र भुवनलाई आश्रय प्रदान गर्ने, मधुर अन्नरस प्रदान गर्ने, अमर र बलवान् तिमीहरू नै छौ। तिमीहरूलाई वरुणदेवले धारण गर्दछन्।

असश्चन्ती भूरिधारे पयस्वती घृतं दुहाते सुकृते शुचिव्रते।
राजन्ती अस्य भुवनस्य रोदसी अस्मे रेतः सिञ्चतं यन्मनुर्हितम् ॥२॥

द्यावापृथिवी अनन्त जलका प्रवाहले युक्त छन्। उत्तम कर्म गर्नेलाई दुवै तेजस्वी जल प्रदान गर्दछन्। हे द्यावापृथिवी ! तिमीहरू दुवै भुवनका अधिष्ठाता हौ। तिमीहरू प्रसन्न भएर हामीलाई हितकारी जल प्रदान गर।

यो वामृजवे क्रमणाय रोदसी मर्तो ददाश धिषणे स साधति।
प्र प्रजाभिर्जायते धर्मणस्परि युवोः सिक्ता विषुरूपाणि सव्रता ॥३॥

हे द्यावापृथिवी ! तिमीहरूका निम्ति यजन गर्नेहरूका सबै कार्य सफल सिद्ध हुन्छन्। तिमीहरूका कृपाले धर्मको आचरण गर्ने मानिसलाई असल सन्तान प्राप्त हुन्छ।

घृतेन द्यावापृथिवी अभीवृते घृतश्रिया घृतपृचा घृतावृधा।
उर्वी पृथ्वी होतृवूर्ये पुरोहिते ते इद्विप्रा ईळते सुम्नमिष्टये ॥४॥

द्यावा र पृथिवी जलयुक्त छन्। सुशोभित जल वृष्टि गर्ने उनै हुन्। यजमानहरू यज्ञमा उनैको स्तुति गर्दै सुख प्राप्तिको कामना गर्दछन्।

मधु नो द्यावापृथिवी मिमिक्षतां मधुश्चुता मधुदुघे मधुव्रते।
दधाने यज्ञं द्रविणं च देवता महि श्रवो वाजमस्मे सुवीर्यम् ॥५॥

हे मधुरताको वर्षा गर्ने द्यावापृथिवी ! हामीलाई मधुरता प्रदान गर। मधुरता तिमीहरूको स्वभाव हो। यज्ञ, धन र देवत्व धारण गर्ने तिमीहरू यश, बल र धन प्रदान गर।

ऊर्जं नो द्यौश्च पृथिवी च पिन्वतां पिता माता विश्वविदा सुदंससा।
संरराणे रोदसी विश्वशम्भुवा सनिं वाजं रयिमस्मे समिन्वताम् ॥६॥

हे सबैको कल्याण गर्ने द्यावापृथिवी ! तिमीहरू हाम्रा मतापिता हौ। सर्वज्ञ, तेजस्वी, ज्ञानी र सत्कर्म गर्ने तिमीहरूनै हौ। हामीलाई पुत्रपौत्रादि युक्त अन्न, बल, यश र धन प्रदान गर।

[सूक्त - ७१]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - सविता। छन्द - जगती त्रिष्टुप्।

उदु ष्य देवः सविता हिरण्यया बाहू अयंस्त सवनाय सुक्रतुः।
घृतेन पाणी अभि प्रुष्णुते मखो युवा सुदक्षो रजसो विधर्मणि ॥१॥

असल कर्म गर्ने सवितादेव सुदक्ष, तरुण, पवित्र र यज्ञरूप हुन्। ती देवताले आफ्ना स्वर्णिम बाहु माथि उचालेर संसारलाई सबै किसिमका कल्याण गर्दछन्।

देवस्य वयं सवितुः सवीमनि श्रेष्ठे स्याम वसुनश्च दावने।
यो विश्वस्य द्विपदो यश्चतुष्पदो निवेशने प्रसवे चासि भूमनः ॥२॥

सवितादेवले सत्प्रेरणा र धन दान गर्ने समयमा हामी उपस्थित होऔं। हे सवितादेव ! तिमी समस्त पशु र मानिसलाई विश्राम र कर्ममा नियोजित गर्दछौ।

अदब्धेभिः सवितः पायुभिष्ट्वं शिवेभिरद्य परि पाहि नो गयम्।
हिरण्यजिह्वः सुविताय नव्यसे रक्षा माकिर्नो अघशंस ईशत ॥३॥

हे सवितादेव ! नदब्ने कल्याणकारी तेजले हाम्रा घरको रक्षा गर। स्वर्ण जिह्वा भएका हे देवता ! हामीलाई नयाँ सुख र सुरक्षा प्रदान गर। हामी पापीका अधीनमा नहोऔं।

उदु ष्य देवः सविता दमूना हिरण्यपाणिः प्रतिदोषमस्थात्।
अयोहनुर्यजतो मन्द्रजिह्व आ दाशुषे सुवति भूरि वामम्॥४॥

सवितादेव शान्त मन भएका, स्वर्णमयी बाहु भएका र यशस्वी छन्। रात्रि समाप्त भएपछि विधिपूर्वक आहुति प्रदान गर्नेलाई उनी उत्तम अन्नधन प्रदान गर्दछन्।

उदू अयाँ उपवक्तेव बाहू हिरण्यया सविता सुप्रतीका।
दिवो रोहांस्यरुहत्पृथिव्या अरीरमत्पतयत् कच्चिदभ्वम्॥५॥

वक्ताले हात माथि उचालेर भाषण गरेझैं स्वर्णिम किरणरूपी हात माथि उचाल्दै सवितादेव उदाउँछन्। उदाएपछि पृथ्वीबाट उठेर स्वर्गका शिखरमा स्थित हुँदै सबैलाई पुष्ट र आनन्दित गराउँछन्।

वाममद्य सवितर्वाममु श्वो दिवेदिवे वाममस्मभ्यं सावीः।
वामस्य हि क्षयस्य देव भूरेरया धिया वामभाजः स्याम॥६॥

हे सर्वउत्पादक सवितादेव ! आज हाम्रा लागि श्रेष्ठ सुख प्रदान गर आउँदा दिनमा पनि सुखप्रदायक होऊ। यसै किसिमले प्रतिदिन हामीलाई उत्तम सुख प्रदान गर। तिमी विपुल धन र आश्रयका अधिपति हौ भन्ने भावनाअनुसार हामी श्रेष्ठ धन प्राप्त गरौं।

[सूक्त - ७२]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - इन्द्रसोम। छन्द - त्रिष्टुप्।

इन्द्रासोमा महि तद्वां महित्वं युवं महानि प्रथमानि चक्रथुः।
युवं सूर्यं विविदथुर्युवं स्व१र्विश्वा तमांस्यहतं निदश्च॥१॥

हे इन्द्रदेव र सोमदेव ! तिमीहरू अत्यन्त महिमावान् छौ। तिमीहरू दुवैले श्रेष्ठ कर्म गरेका छौ, सूर्य र जल प्राप्त गरेका छौ तथा अन्धकार र निन्दकलाई पर पुऱ्याएका छौ।

इन्द्रासोमा वासयथ उषासमुत्सूर्यं नयथो ज्योतिषा सह।
उप द्यां स्कम्भथुः स्कम्भनेनाप्रथतं पृथिवीं मातरं वि॥२॥

हे इन्द्रदेव र सोमदेव ! तिमीहरूले उषालाई स्थापित गरायौ र प्रकाशित सूर्यलाई माथि उठायौ। तिमीहरूले आधार दिएर द्युलोक अड्यायौ र पृथ्वी मातालाई विस्तृत गरायौ।

इन्द्रासोमावहिमपः परिष्ठां हथो वृत्रमनु वां द्यौरमन्यत।
प्रार्णांस्यैरयतं नदीनामा समुद्राणि पप्रथुः पुरूणि॥३॥

हे इन्द्रदेव र सोमदेव ! तिमीहरूले जल प्रवाह रोक्ने वृत्रलाई नष्ट गरायौ। द्युलोकले तिमीहरूलाई ठूलो बनायो। तिमीहरूले नदीको जल बगाएर समुद्र भराइदियौ।

इन्द्रासोमा पक्वमामास्वन्तर्नि गवामिद्दधथुर्वक्षणासु।
जगृभथुरनपिनद्धमासु रुशच्चित्रासु जगतीष्वन्तः॥४॥

हे इन्द्रदेव र सोमदेव ! तिमीहरूले कलिला गाईका थुनमा परिपक्व दुध स्थापित गरायौ र विभिन्न वर्णका गाईमा सेतो दुध धारण गरायौ।

इन्द्रासोमा युवमङ्ग तरुत्रमपत्यसाचं श्रुत्यं रराथे।
युवं शुष्मं नर्यं चर्षणिभ्यः सं विव्यथुः पृतनाषाहमुग्रा॥५॥

हे इन्द्रदेव र सोमदेव ! तिमीहरू हामीलाई कल्याण हुने धन प्रदान गर। हामीलाई शत्रुका सेना जित्ने खालको उग्र बल प्रदान गर।

[सूक्त - ७३]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - बृहस्पति। छन्द - त्रिष्टुप्।

यो अद्रिभित्प्रथमजा ऋतावा बृहस्पतिराङ्गिरसो हविष्मान्।
द्विबर्हज्मा प्राघर्मसत्पिता न आ रोदसी वृषभो रोरवीति॥१॥

सबैभन्दा पहिले उत्पन्न भएका बृहस्पतिले पर्वत ध्वस्त गरे। जो अङ्गिरसहरूमा हविष्यान्नले युक्त छन्, जो स्वयंका तेजले तेजस्वी छन्, उनै उत्तम गुणले भूमिको सुरक्षा गर्ने, बलवान्, हाम्रा पालक बृहस्पतिदेव द्युलोक र भूलोकमा गर्जना गर्दछन्।

जनाय चिद्य ईवत उ लोकं बृहस्पतिर्देवहूतौ चकार।
घ्नन्वृत्राणि वि पुरो दर्दरीति जयञ्छत्रूँरमित्रान्पृत्सु साहन् ॥२॥

जुन बृहस्पतिदेव स्तोताहरूलाई स्थान दिन्छन्, उनी शत्रु मार्ने र शत्रुविजेता हुन्। उनले शत्रुलाई परास्त गरेर उनीहरूका सहर ध्वस्त गर्दछन्।

बृहस्पतिः समजयद्वसूनि महो व्रजान् गोमतो देव एषः।
अपः सिषासन्त्स्वऽ१ रप्रतीतो बृहस्पतिर्हन्त्यमित्रमर्कैः ॥३॥

बृहस्पतिदेवले असुरलाई परास्त गरेर गाईरूपी धन जिते। उनै बृहस्पतिदेव आफ्ना मन्त्रले स्वर्गका शत्रु बिनाश गर्दछन्।

[सूक्त - ७४]

ऋषि - भारद्वाज बार्हस्पत्य। देवता - सोमरुद्र। छन्द - त्रिष्टुप्।

सोमारुद्रा धारयेथामसुर्यंऽ१ प्र वामिष्टयोऽरमश्नुवन्तु।
दमेदमे सप्त रत्ना दधाना शं नो भूतं द्विपदे शं चतुष्पदे ॥१॥

हे सोमदेव र रुद्रदेव ! तिमीहरू दुवै सामर्थ्यवान् छौ। हाम्रा समस्त यज्ञ तिमीहरूसम्म पूर्ण रूपमा पुगून्। प्रत्येक घरमा सात रत्न स्थापित गरेर हाम्रो मङ्गल गर। हाम्रा दुई खुट्टे र चार खुट्टेलाई सुख प्रदान गर।

सोमारुद्रा वि वृहतं विषूचीममीवा या नो गयमाविवेश।
आरे बाधेथां निर्ऋतिं पराचैरस्मे भद्रा सौश्रवसानि सन्तु ॥२॥

हे सोमदेव र रुद्रदेव ! तिमीहरू दुवै हाम्रा घरमा पस्ने रोगको विनाश गर। दरिद्रता हामीदेखि टाढै रहोस्। हामी अन्नसहित सुखले रहौं।

सोमारुद्रा युवमेतान्यस्मे विश्वा तनूषु भेषजानि धत्तम्।
अव स्यतं मुञ्चतं यन्नो अस्ति तनूषु बद्धं कृतमेनो अस्मत् ॥३॥

हे सोमदेव र रुद्रदेव ! तिमीहरू दुवै हाम्रा शरीरमा सबै औषधि धारण गराओ। हाम्रा बन्धन खोलिदेओ, हामीलाई मुक्त गर।

तिग्मायुधौ तिग्महेती सुशेवौ सोमारुद्राविह सु मृळतं नः।
प्र नो मुञ्चतं वरुणस्य पाशाद् गोपायतं नः सुमनस्यमाना ॥४॥

तीक्ष्ण आयुध धारण गर्ने, उत्तम विचारवान्, उचित सेवा गरिने हे सोमदेव र रुद्रदेव ! तिमीहरू हामीलाई वरुणपाशबाट मुक्त गरेर उत्तम प्रकारका सुख प्रदान गर।

[सूक्त - ७५]

ऋषि - पायु भारद्वाज। देवता - शस्त्रास्त्र। छन्द - त्रिष्टुप् जगती।

जीमूतस्येव भवति प्रतीकं यद्वर्मी याति समदामुपस्थे।
अनाविद्धया तन्वा जय त्वं स त्वा वर्मणो महिमा पिपर्तु ॥१॥

कवच धारण गरेर जब शूरवीर योद्धा सङ्ग्रामस्थलतिर जान्छन्, त्यस बेला सेनाको स्वरूप बादलको जस्तो हुन्छ। हे वीर पुरुष ! तिमी आहत नभईकन विजय प्राप्त गर, त्यस कवचका महान् शक्तिले तिमीलाई रक्षा गरोस्।

धन्वना गा धन्वनाजिं जयेम धन्वना तीव्राः समदो जयेम।
धनुः शत्रोरपकामं कृणोति धन्वना सर्वाः प्रदिशो जयेम ॥२॥

धनुषको शक्तिबाट युद्ध जितेर गाई प्राप्त गर्दछौं। भीषण सङ्ग्राममा धनुषले शत्रुको कामना ध्वस्त गराउँछौं। हाम्रो धनुष शत्रुलाई पराजित गराउँछ, यस्ता धनुषको महिमाले सबै दिशामा विजय गर्दछौं।

वक्ष्यन्तीवेदा गनीगन्ति कर्णं प्रियं सखायं परिषस्वजाना।
योषेव शिङ्क्ते वितताधि धन्वञ्ज्या इयं समने पारयन्ती ॥३॥

सङ्ग्राममा विजय प्राप्त गराउने, धनुषमा चढ्ने प्रत्यञ्चाले अव्यक्त ध्वनि गर्दै प्रिय बाणरूपी मित्रलाई भेट्दछ। योद्धाका कानसम्म खिँचिदा त्यसले केही भन्न पो लागेको हो कि जस्तो लाग्दछ। सङ्कटबाट पार लगाउने यही प्रत्यञ्चा हो।

ते आचरन्ती समनेव योषा मातेव पुत्रं बिभृतामुपस्थे।
अप शत्रून् विध्यतां संविदाने आर्त्नी इमे विष्फुरन्ती अमित्रान् ॥४॥

दुवै समान बल भएका दुई स्त्रीभैं आचरण गर्दछन्। माताले काखमा पुत्र लिएभैं बाण साथमा लिने यो दुवैले शत्रुलाई छेडेर मित्रबाहेक सबैलाई छरपस्ट गराउँछन्।

बह्वीनां पिता बहुरस्य पुत्रश्चिश्चा कृणोति समनावगत्य।
इषुधिः सङ्काः पृतनाश्च सर्वाः पृष्ठे निनद्धो जयति प्रसूतः ॥५॥

यो धेरैको पिता हो र यसका धेरै पुत्र छन्। समरमा पुगेर यसले चीँचीँ ध्वनि निकाल्छ। योद्धाका पिठमा बाँधिएर आफूले उत्पन्न गरेका बाणले सबै सङ्गठित शत्रु जित्दछ।

रथे तिष्ठन्नयति वाजिनः पुरो यत्रयत्र कामयते सुषारथिः।
अभीशूनां महिमानं पनायत मनः पश्चादनु यच्छन्ति रश्मयः ॥६॥

उत्तम सारथी रथमा बसेर अश्वलाई आफूखुसी जतातर्तै अगाडि सार्दछ। हे स्तोता हो ! तिमीहरू लगामको महिमा बयान गर। ऊ मनअनुसार नै प्रवृत्त हुन्छ।

तीव्रान् घोषान् कृण्वते वृषपाणयोऽश्वा रथेभिः सह वाजयन्तः।
अवक्रामन्तः प्रपदैरमित्रान् क्षिणन्ति शत्रूँरनपव्ययन्तः ॥७॥

रथजस्तै गतिमान, साँढेभन्दा धेरै शक्तिशाली अश्व हामीबाट जोगिएर शत्रुलाई खुट्टाले कुच्याउँछ र नष्ट गर्दछ।

रथवाहनं हविरस्य नाम यत्रायुधं निहितमस्य वर्म।
तत्रा रथमुप शग्मं सदेम विश्वाहा वयं सुमनस्यमानाः ॥८॥

रथलाई वृद्धि गराउने हव्य, अस्त्रशस्त्र र कवच आदि जहाँ राखिएका हुन्छन्, हामी प्रसन्न मनले त्यस रथमा सधैं रहन्छौं।

स्वादुषंसदः पितरो वयोधाः कृच्छ्रेश्रितः शक्तीवन्तो गभीराः।
चित्रसेना इषुबला अमृध्राः सतोवीरा उरवो व्रातसाहाः ॥९॥

यिनीहरू उमेर र बल धारण गर्दै शत्रुको अन्न नाश गरेर हामीलाई अन्न प्रदान गर्दछन्। सङ्कटका समयमा आश्रय प्रदान गर्ने, गम्भीर, विचित्र सेनाले युक्त यी महान् वीर स्वयं अहिंसित रहेर शत्रुसेना नाश गर्नमा समर्थ छन्।

ब्राह्मणासः पितरः सोम्यासः शिवे नो द्यावापृथिवी अनेहसा।
पूषा नः पातु दुरिताद् ऋतावृधो रक्षा माकिर्नो अघशंस ईशत ॥१०॥

ब्राह्मण, पितृ, सत्यरूपी यज्ञका पालक र सोमरस सिद्ध गर्ने यी सबैले हामीलाई रक्षा गरुन्। कल्याणकारी द्यावापृथिवी र पूषादेवले हामीलाई पापबाट जोगाऊन्। पापी दुराचारी व्यक्तिले हामीमाथि शासन गर्न नपाओस्।

सुपर्णं वस्ते मृगो अस्या दन्तो गोभिः सन्नद्धा पतति प्रसूता।
यत्रा नरः सं च वि च द्रवन्ति तत्रास्मभ्यमिषवः शर्म यंसन् ॥११॥

राम्रा पँखेटा भएको चरोजस्तो गतिशील, तीक्ष्ण दाँतजस्तो चुच्चो भएको, मनले चाहेका दिशामा जाने बाणलाई शरीरका अवयवद्वारा सन्धान गरियो। उत्पन्न हुनासाथ यसले प्रहार गर्दछ। जहाँ मानिसहरू एकत्र भएर वा छरिएर गतिशील हुन्छन्, त्यहाँ यो बाण हाम्रो शरणदाता र सुखदायक होस्।

ऋजीते परि वृङ्धि नोऽश्मा भवतु नस्तनूः।
सोमो अधि ब्रवीतु नोऽदितिः शर्म यच्छतु ॥१२॥

हे छोटो मार्गमा चल्ने ! हामीलाई सबै तिरबाट जोगाऊ। हाम्रो शरीर ढुङ्गोजस्तै बलियो होस्। सोमदेवले हामीलाई उत्साहित गरुन् र माता अदितिले सुख प्रदान गरुन्।

आ जङ्घन्ति सान्वेषां जघनाँ उपजिघ्नते।
अश्वाजनि प्रचेतसोऽश्वान्त्समत्सु चोदय ॥१३॥

हे अश्व चलाउने चाबुक ! तिमी सङ्ग्राममा जागरुक अश्वलाई उत्प्रेरित र उत्तेजित गराऊ। यिनका ठडिएका माथिल्ला वा तल्ला अङ्गमा नजिकैबाट प्रहार गर।

अहिरिव भोगैः पर्येति बाहुं ज्याया हेतिं परिबाधमानः।

हस्तघ्नो विश्वा वयुनानि विद्वान् पुमान्पुमांसं परि पातु विश्वतः ॥१४॥

सर्पभैँ घेरिएर प्रत्यञ्चाको आघातबाट यसले हातको रक्षा गर्दछ। यी सबैले कुशल र जानकारी भएका मानिसलाई सबै तिरबाट संरक्षण गरुन्।

आलाक्ता या रुरुशीर्ष्ण्यथो यस्या अयो मुखम्।

इदं पर्जन्यरेतस इष्वै देव्यै बृहन्नमः ॥१५॥

विषालु, फलामको पातो ठोकिएको, हिंसक टुँडो भएका यस बाणको पराक्रम पर्जन्यले बढ्दछ। यस्ता बाणदेवतालाई हाम्रो नमस्कार छ।

अवसृष्टा परा पत शरव्ये ब्रह्मसंशिते।

गच्छामित्रान्प्र पद्यस्व मामीषां कं चनोच्छिषः ॥१६॥

हे बाणरूपी अस्त्र ! मन्त्रका प्रयोगले तीक्ष्ण गराएका तिमीलाई हामीले छोड्दा शत्रुका सेनामाथि एकै पटक प्रहार गर र उनलाई सन्तप्त गराऊ। उनका शरीरमा पसेर सबैको नाश गर र कुनै पनि दुष्टलाई जिउँदो नछोड।

यत्र बाणाः सम्पतन्ति कुमारा विशिखाइव।

तत्रा नो ब्रह्मणस्पतिरदितिः शर्म यच्छतु विश्वाहा शर्म यच्छतु ॥१७॥

जहाँ शिखारहित बालकजस्ता बाण खस्दछन्, त्यहाँ ब्रह्मणस्पति र अदितिले हामीलाई सुख प्रदान गरुन् र हाम्रो सधैं कल्याण गरुन्।

मर्माणि ते वर्मणा छादयामि सोमस्त्वा राजामृतेनानु वस्ताम्।

उरोर्वरीयो वरुणस्ते कृणोतु जयन्तं त्वानु देवा मदन्तु ॥१८॥

हे रथी ! तिम्रो मर्मस्थल हामी कवचयुक्त गराउँछौं। सोमदेवका कृपाले तिमीलाई अमृत युक्त गरोस्। वरुणदेवले तिमीलाई सुख प्रदान गरुन्। तिम्रा विजयले देवताहरू आनन्दित होऊन्।

यो नः स्वो अरणो यश्च निष्ट्यो जिघांसति।

देवास्तं सर्वे धूर्वन्तु ब्रह्म वर्म ममान्तरम् ॥१९॥

हाम्रा आफन्त भएर जसले हामीसित द्वेष गर्दछन्, गुप्त रूपले हाम्रो संहार गर्ने इच्छा गर्दछन्, उनीहरूलाई सबै देवताहरूले नष्ट गरिदिऊन्। वेदमन्त्रहरू हाम्रा कवचजस्तै हुन्। उनैले हाम्रो कल्याण गरुन्।

॥इति षष्ठं मण्डलं समाप्तम्॥

छैटौं मण्डल सकियो।

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ सप्तमं मण्डलम्॥

॥सातौं मण्डल॥

### [सूक्त - १]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता**- अग्नि। **छन्द**- विराट् त्रिष्टुप्।

**अग्निं नरो दीधितिभिररण्योर्हस्तच्युती जनयन्त प्रशस्तम्।**
**दूरेदृशं गृहपतिमथर्युम् ॥१॥**

प्रशंसनीय, गतिमान, परबाट देखा पर्ने गृहपतिको रूपमा रहेका अग्निलाई असल मानिसले हातका औँलाका कुशलताले प्राप्त गरे।

**तमग्निमस्ते वसवो न्यृण्वन्त्सुप्रतिचक्षमवसे कुतश्चित्।**
**दक्षाय्यो यो दम आस नित्यः ॥२॥**

घरमा प्रज्वलित गरिने, नित्य दर्शनीय, सधैँ ज्वालायुक्त ती अग्निदेवलाई आफ्नो रक्षाका लागि यज्ञस्थलमा स्थापित गरिन्छ।

**प्रेद्धो अग्ने दीदिहि पुरो नोऽजस्रया सूर्म्या यविष्ठ।**
**त्वां शश्वन्त उप यन्ति वाजाः ॥३॥**

हे शक्तिशाली अग्निदेव ! राम्ररी प्रज्वलित गरिएपछि तिमी प्रचण्ड ज्वालासँगै हाम्रा नजिकै प्रदीप्त भइदेऊ। निरन्तर रूपमा तिमीलाई आहुति समर्पित गरिँदै छ।

**प्र ते अग्नयोऽग्निभ्यो वरं निः सुवीरासः शोशुचन्त द्युमन्तः।**
**यत्रा नरः समासते सुजाताः ॥४॥**

जोसित उत्तम जन्म पाएका याजक बसेका छन्, ती तेजस्वी अग्निदेवले हाम्रो कल्याण गर्दै सन्तान प्रदान गर्दछन्।

**दा नो अग्ने धिया रयिं सुवीरं स्वपत्यं सहस्य प्रशस्तम्।**
**न यं यावा तरति यातुमावान् ॥५॥**

शत्रु जित्ने हे अग्निदेव ! हामीलाई वीर, बुद्धिमान् र श्रेष्ठ पुत्रका साथ प्रशंसित धन प्रदान गर, त्यसलाई हिंस्रक शत्रुले अपहरण गर्न नसकून्।

**उप यमेति युवतिः सुदक्षं दोषा वस्तोर्हविष्मती घृताची।**
**उप स्वैनमरमतिर्वसूयुः ॥६॥**

आहुतिका लागि योग्य, धारण गर्ने, नित्य सम्बद्ध, सुदक्ष, कुशल यज्ञाग्निका नजिक पुगेका घिउले आफ्ना धनद्वारा अग्निलाई प्रदीप्त गराउँछ।

**विश्वा अग्नेऽप दहारातीर्येभिस्तपोभिरदहो जरूथम्।**
**प्र निस्वरं चातयस्वामीवाम् ॥७॥**

हे अग्निदेव ! जुन तेजस्वी ज्वालाले तिमी कटुभाषी असुरको नाश गर्दथ्यौ, उसै तेजले हाम्रा समस्त शत्रु नाश गर र जरैदेखि रोग मासिदेऊ।

**आ यस्ते अग्न इधते अनीकं वसिष्ठ शुक्र दीदिवः पावक।**
**उतो न एभिः स्तवथैरिह स्याः ॥८॥**

हे पवित्र गराउने अग्निदेव ! तिम्रो पवित्र ज्वाला सेतो हुन्छ। तिमी आफ्ना याजकका नजिकै रहेर हाम्रा स्तोत्रले प्रसन्न भएर यस यज्ञमा रहिदेऊ।

**वि ये ते अग्ने भेजिरे अनीकं मर्ता नरः पित्र्यासः पुरुत्रा।**
**उतो न एभिः सुमना इह स्याः ॥९॥**

हे अग्निदेव ! तिम्रो तेज पितृहरूका हितैषि मानिसले विभिन्न स्थानमा फिँजाइदिएका छन्। हाम्रा स्तोत्रले प्रसन्न भएर हाम्रा नजिकै तिमी निवास गर।

इमे नरो वृत्रहत्येषु शूरा विश्वा अदेवीरभि सन्तु मायाः।
ये मे धियं पनयन्त प्रशस्ताम् ॥१०॥

जुन मानिसले अग्निको उत्तम कर्म जानेका छन्, तिनीहरू सङ्ग्राममा शत्रु असुरको मायामाथि विजय प्राप्त गर्दछन्।

मा शूने अग्ने नि षदाम नृणां माशेषसोऽवीरता परि त्वा।
प्रजावतीषु दुर्यासु दुर्य ॥११॥

हे अग्निदेव ! वीरतारहित, पुत्रपौत्रादि रहित घरमा हामीले रहनु नपरोस्। घरका हितैषि हे अग्निदेव ! पुत्रपौत्रादिले भरिएका घरमा हामी तिम्रो उपासना गर्दै निवास गरौं।

यमश्वी नित्यमुपयाति यज्ञं प्रजावन्तं स्वपत्यं क्षयं नः।
स्वजन्मना शेषसा वावृधानम् ॥१२॥

अश्वमा आरूढ भएका पूजनीय अग्निदेवको उपासना जहाँ नित्य गरिन्छ, त्यहाँ प्रजाले परिपूर्ण, सुसन्तति बढाउने घर हामीलाई प्राप्त होस्।

पाहि नो अग्ने रक्षसो अजुष्टात् पाहि धूर्तेरररुषो अघायोः।
त्वा युजा पृतनायूँरभि ष्याम् ॥१३॥

हे अग्निदेव ! असम्बद्ध, दुष्ट असुरबाट हाम्रो रक्षा गर। सेनासँग आएर आक्रमण गर्ने दुष्ट शत्रुबाट हामीलाई जोगाऊ। तिम्रा सहायताले उनीहरूलाई हामी जितौं।

सेदग्निरग्नींरत्यस्त्वन्यान्यत्र वाजी तनयो वीडुपाणिः।
सहस्रपाथा अक्षरा समेति ॥१४॥

बलिया पाखुरा भएका, बलवान् पुत्रहरू अक्षय स्तोत्रले जुन अग्निदेवको निकटता प्राप्त गर्दछन्, उनै अग्निदेवलाई तिनले जागृत गराउन्।

सेदग्निर्यो वनुष्यतो निपाति समेद्धारमंहस उरुष्यात्।
सुजातासः परि चरन्ति वीराः ॥१५॥

जुन अग्निदेव आफूलाई प्रदीप्त गर्नेहरूको रक्षा गर्दछन्, हिंसक र पापबाट हाम्रो रक्षा गर्दछन् वा जसको उपासनाले मानिसले उत्तम औरस पुत्र प्रदान गर्दछन्, उनै अग्निदेव असल हुन्।

अयं सो अग्निराहुतः पुरुत्रा यमीशानः समिदिन्धे हविष्मान्।
परि यमेत्यध्वरेषु होता ॥१६॥

हवि प्रदान गरेर यजमानले राम्ररी प्रदीप्त गर्दै परिक्रमा गरिने अग्निदेव श्रेष्ठ हुन्। उनलाई अनेकौं पटक आहुति प्रदान गरिएको छ।

त्वे अग्न आहवनानि भूरीशानास आ जुहुयाम नित्या।
उभा कृण्वन्तो वहतू मियेधे ॥१७॥

हे अग्निदेव ! हामी प्रत्येक दिन स्तुति र यजन दुवै किसिमका कर्म तिम्रै निम्ति गर्दछौं। कृपा गरेर हामीलाई तिमी धनको स्वामी बनाउँछौ।

इमो अग्ने वीततमानि हव्याजस्रो वक्षि देवतातिमच्छ।
प्रति न ईं सुरभीणि व्यन्तु ॥१८॥

हे अग्निदेव ! सधैं मन पर्ने हाम्रो हवि समस्त देवताहरूकहाँ पुऱ्याइदेऊ। हामीले अर्पित गरेको यो सुगन्धित आहुति देवताहरूका लागि अत्यन्त प्रिय हुन्छ।

मा नो अग्नेऽवीरते परा दा दुर्वाससेऽमतये मा नो अस्यै।
मा नः क्षुधे मा रक्षस ऋतावो मा नो दमे मा वन आ जुहूर्थाः ॥१९॥

हे अग्निदेव ! तिम्रो कृपाले हामी बुद्धिहीन नहोऔं र हामीले भोकै बस्नु नपरोस्। हे अग्निदेव ! हामी कहिल्यै वस्त्र र सन्तानविहीन नरहौं। हे अग्निदेव ! हामी असुर शत्रुका फेला नपरौं। हामीलाई घर वा जङ्गलका मार्गमा मर्नु नपरोस्।

नू मे ब्रह्माण्यग्न उच्छशाधि त्वं देव मघवद्भ्यः सुषूदः।
रातौ स्यामोभयास आ ते यूयं पात स्वस्तिभिः सदा नः ॥२०॥

हे अग्निदेव ! हाम्रा लागि उत्तम अन्न प्रदान गर। तिमी आफ्ना याजकलाई अन्न प्रदान गर्दछौ। हामी स्तोता र हविदाता दुवैले तिम्रो अनुदान प्राप्त गरौं। हामीलाई तिमी सुरक्षित राखेर हाम्रो कल्याण गर।

त्वमग्ने सुहवो रण्वसन्दृक् सुदीती सूनो सहसो दिदीहि।
मा त्वे सचा तनये नित्य आ धङ्मा वीरो अस्मन्नर्यो वि दासीत् ॥२१॥

हे बलबाट उत्पन्न भएका अग्निदेव ! उत्तम आहुतिले बोलाइने तिमी रमणीय ज्वालाका साथ प्रकट होइदेऊ। हाम्रा पुत्रलाई तिमी नडढाइदेऊ। उनीहरूको सधैं रक्षा गर्दै त्यस्ता वीरहरूलाई दीर्घायु प्रदान गर।

मा नो अग्ने दुर्भृतये सचैषु देवेद्धेष्वग्निषु प्र वोचः।
मा ते अस्मान्दुर्मतयो भृमाच्चिद्देवस्य सूनो सहसो नशन्त ॥२२॥

हे अग्निदेव ! तिमी हाम्रो सहायक होऊ। देवता र ऋत्विक्बाट प्रवृद्ध गरिएका अग्निदेवले हामीलाई पर्याप्त पोषण गरुन्। हे बलका पुत्र अग्निदेव ! तिम्रो दण्डदायक बुद्धि र मायाको भ्रम हामीमाथि व्याप्त हुन नसकोस्।

स मर्तो अग्ने स्वनीक रेवानमर्त्ये य आजुहोति हव्यम्।
स देवता वसुवनिं दधाति यं सूरिरर्थी पृच्छमान एति ॥२३॥

हे अग्निदेव ! तिमी तेजस्वी र अमर छौ। तिम्रा लागि जुन याजकले हवि अर्पित गर्दछन्, तिनीहरू धनवान् हुन्छन्। स्तोताले गाएका स्तोत्र, जसका आश्रयमा जान्छन्, त्यस्ता अग्निदेवले याजकको सधैं रक्षा गरुन्।

महो नो अग्ने सुवितस्य विद्वान् रयिं सूरिभ्य आ वहा बृहन्तम्।
येन वयं सहसावन्मदेमाविक्षितास आयुषा सुवीराः ॥२४॥

हे अग्निदेव ! तिमी सर्वज्ञ हौ। त्यसैले हामीलाई उत्तम र कल्याणकारी कार्यमा प्रेरित गर। हामी स्तोताहरू तिम्रो स्तुति गर्दछौं। हे बलद्वारा उत्पन्न रक्षा गर्ने अग्निदेव ! हामीलाई तिमी महान् ऐश्वर्य प्रदान गर। त्यसबाट हामी वीर पुत्रपौत्रका साथ पूर्ण आयुका भएर सुखसँग रहन पाऔं।

नू मे ब्रह्माण्यग्न उच्छशाधि त्वं देव मघवद्भ्यः सुषूदः।
रातौ स्यामोभयास आ ते यूयं पात स्वस्तिभिः सदा नः ॥२५॥

हे अग्निदेव ! हाम्रा निम्ति अन्न अझै पवित्र गराऊ। जसले हवि प्रदान गर्दछन्, उनलाई अन्न र धन प्रदान गर। हामी दुवैले दिने गरेको दिव्य दान प्राप्त गर। कल्याणकारी रक्षा साधनले हाम्रो रक्षा गर।

[सूक्त- २]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- आप्री सूक्त। छन्द- त्रिष्टुप्।

जुषस्व नः समिधमग्ने अद्य शोचा बृहद्यजतं धूममृण्वन्।
उप स्पृश दिव्यं सानु स्तूपैः सं रश्मिभिस्ततनः सूर्यस्य ॥१॥

हे अग्निदेव ! आज तिमी हाम्रो समिधा स्वीकार गर। यज्ञीय धुवाँ फैलाउँदै राम्ररी प्रदीप्त होऊ। तिम्रो दिव्य, कान्तियुक्त, स्तुत्य किरण अन्तरिक्ष स्पर्श गरेर सूर्यका किरणमा मिसियोस्।

नराशंसस्य महिमानमेषामुप स्तोषाम यजतस्य यज्ञैः।
ये सुक्रतवः शुचयो धियंधाः स्वदन्ति देवा उभयानि हव्या ॥२॥

उत्तम कर्म गर्ने देवताहरूले दुई किसिमका हविको आस्वादन गर्दछन्। उनीहरूका बीचमा प्रशंसनीय र पूजनीय अग्निदेवलाई हवि प्रदान गर्दै उनको महिमा गाउँछौं।

ईळेन्यं वो असुरं सुदक्षमन्तर्दूतं रोदसी सत्यवाचम्।
मनुष्वदग्निं मनुना समिद्धं समध्वराय सदमिन्महेम ॥३॥

हे यजमानहरू हो ! अग्निदेवको पूजा गरिराख, उनी बलवान्, स्तुतिका लागि योग्य, सुदक्ष र द्यावापृथिवीमा दूतजस्तै भएर कार्य गर्दछन्।

सपर्यवो भरमाणा अभिज्ञु प्र वृञ्जते नमसा बर्हिरग्नौ।
आजुह्वाना घृतपृष्ठं पृषद्वदध्वर्यवो हविषा मर्जयध्वम् ॥४॥

हे अध्वर्युहरू हो ! तिमीहरू घिउले भिजेको कुश अर्पित गर्दै यजन गर। याजकहरू सेवा भावले घुँडा टेकेर पात्र भर्दछन् र हविका रूपमा द्रव्य अर्पित गर्दछन्।

स्वाध्यो३ वि दुरो देवयन्तोऽशिश्रयू रथयुर्देवताता।
पूर्वी शिशुं न मातरा रिहाणे समग्रुवो न समनेष्वञ्जन् ॥५॥

देवत्व कामना गर्ने, रथ प्राप्त गर्न खोज्ने, असल कर्म गर्ने मानिसले यज्ञको आश्रय लिऊन्। नदीले नजिकका क्षेत्र सेचन गरेझैं यज्ञमा अग्निलाई घिउले सेचन गरुन्। माउ गाईले आफ्ना बाछालाई माया गरेझैं यज्ञका अग्निलाई याजकले माया गरुन्।

उत योषणे दिव्ये मही न उषासानक्ता सुदुघेव धुनुः।
बर्हिषदा पुरुहूते मघोनी आ यज्ञिये सुविताय श्रयेताम् ॥६॥

कुशका आसनमा विराजमान, धेरैबाट प्रशंसित, धनऐश्वर्य प्रदान गर्ने, दिव्य रूप भएका, यजन गर्न योग्य, उषा र रात्रि रूपका दुई देवीले इच्छापूर्वक दुध दिने कामधेनुजस्तै भएर हाम्रो कल्याण गरुन्, हामीलाई आश्रय प्रदान गरुन्।

विप्रा यज्ञेषु मानुषेषु कारू मन्ये वां जातवेदसा यजध्यै।
ऊर्ध्वं नो अध्वरं कृतं हवेषु ता देवेषु वनथो वार्याणि ॥७॥

हे होता ! तिमी यज्ञ गर भन्ने प्रार्थना हामी गर्दछौं। हाम्रो स्तुति सुनेर यज्ञलाई उर्ध्वगामी बनाउँदै देवताहरूकहाँ पुऱ्याऊ। देवताहरू प्रसन्न भएर हामीलाई धन प्रदान गरुन्।

आ भारती भारतीभिः सजोषा इडा देवैर्मनुष्येभिरग्निः।
सरस्वती सारस्वतेभिरर्वाक् तिस्रो देवीर्बर्हिरेदं सदन्तु ॥८॥

भारतीहरूसँग भारतीदेवी, देवता एवं मानिससँग इडादेवी र सारस्वतहरूसँग सरस्वती देवी आएर कुशका आसनमा विराजमान होऊन्।

तन्नस्तुरीपमध पोषयित्नु देव त्वष्टर्वि रराणः स्यस्व।
यतो वीरः कर्मण्यः सुदक्षो युक्तग्रावा जायते देवकामः ॥९॥

हे त्वष्टादेव ! प्रसन्न भएर हामीलाई स्फूर्ति र वीर्ययुक्त बनाऊ। त्यसबाट देवताहरूको कामना गर्ने, वीर, उत्तम दक्षताले यज्ञकर्म सम्पन्न गर्ने पुत्र उत्पन्न गर्न सकौं।

वनस्पतेऽव सृजोप देवानग्निर्हविः शमिता सूदयाति।
सेदु होता सत्यतरो यजाति यथा देवानां जनिमानि वेद ॥१०॥

हे वनस्पति ! तिमी प्रज्वलित होऊ, अग्निका रूपमा समस्त देवताहरूको आह्वान गर। अग्निदेव शान्तिदायक हवि देवतालाई अर्पित गर्दछन्। उनै अग्निदेवले देवता बोलाउने सत्यनिष्ठ यज्ञ गरुन्। अग्निदेव वास्तवमा देवताहरूको उत्पत्तिका ज्ञाता हुन्।

आ याह्यग्ने समिधानो अर्वाङ् इन्द्रेण देवैः सरथं तुरेभिः।
बर्हिर्न आस्तामदितिः सुपुत्रा स्वाहा देवा अमृता मादयन्ताम् ॥११॥

हे अग्निदेव ! तिमी प्रदीप्त भएर इन्द्र र त्वष्टा आदि देवताहरूसँग रथमा आरूढ भएर हाम्रा निकट आऊ। असल पुत्रहरूकी माता अदिति कुशको आसनमा बसून् र प्रदान गरिएको आहुतिले अमर देवताहरू पनि हर्षित होऊन्।

[सूक्त - ३]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- अग्नि। छन्द- त्रिष्टुप्।

अग्निं वो देवमग्निभिः सजोषा यजिष्ठं दूतमध्वरे कृणुध्वम्।
यो मर्त्येषु निध्रुविर्ऋतावा तपुर्मूर्धा घृतान्नः पावकः ॥१॥

हे देवताहरू हो ! अनेकौं अग्निमध्येका पूज्य यज्ञाग्निलाई नै दूतका रूपमा नियुक्त गर। उनी देवता भए पनि मानिसका साथी हुन्, उनी यज्ञवान् वा सत्यवान् छन्, उनको आहार घिउ हो। तिनको तेज र ताप विकारनाशक हुनुका साथै पवित्रता प्रदायक छ।

प्रोथदश्वो न यवसेऽविष्यन्यदा महः संवरणाद्व्यस्थात्।
आदस्य वातो अनु वाति शोचिरध स्म ते व्रजनं कृष्णमस्ति ॥२॥

हिहिल्हने घोडाले घाँसमा चरेझैं दावानलले पेटमा रुख भराउँछन्। यस अवस्थामा वायुका प्रभावले कालो धुवाँ जतातिर जान्छ, अग्निदेवको मार्ग त्यतै हुन्छ।

उद्यस्य ते नवजातस्य वृष्णोऽग्ने चरन्त्यजरा इधानाः।
अच्छा द्यामरुषो धूम एति सं दूतो अग्न ईयसे हि देवान्॥३॥

हे यज्ञका अग्निदेव ! तिम्रो नयाँ ज्वाला वर्षा गर्नमा समर्थ छ। हे प्रकाशित यज्ञका अग्निदेव ! तिमी नष्ट नहुने आफ्नो उर्जासँगै द्युलोक पुगेर देवतालाई सन्तुष्ट गर्दछौ।

वि यस्य ते पृथिव्यां पाजो अश्रेत्तृषु यदन्ना समवृक्त जम्भैः।
सेनेव सृष्टा प्रसितिष्ट एति यवं न दस्म जुह्वा विवेक्षि॥४॥

हे अग्निदेव ! जौ खाएझैं काठ आदि भक्षण गर्दछौ। तिम्रा ज्वालारूपी दाँतले काठरूपी अन्न भक्षण गर्दा पृथ्वीलोकमा तिम्रो तेज शीघ्रताले फैलन्छ।

तमिद्दोषा तमुषसि यविष्ठमग्निमत्यं न मर्जयन्त नरः।
निशिशाना अतिथिमस्य योनौ दीदाय शोचिराहुतस्य वृष्णः॥५॥

इच्छा पूर्ति गर्नमा समर्थ अग्निदेवको ज्वाला तेजस्वी हुन्छ। रातदिन गतिमान् रहने अश्वजस्तै अग्निदेवलाई याजकहरू उपासना गर्दछन्। तरुण अग्निदेव अतिथिजस्तै पूजनीय छन्।

सुसन्दृक्ते स्वनीक प्रतीकं वि यद्रुक्मो न रोचस उपाके।
दिवो न ते तन्यतुरेति शुष्मश्चित्रो न सूरः प्रति चक्षि भानुम्॥६॥

हे तेजस्वी अग्निदेव ! तिमी सूर्यजस्तै देदीप्यमान हुँदा तिम्रो स्वरूप अति शोभनीय हुन्छ। तिम्रो तेज बिजुलीजस्तै अन्तरिक्षमा फैलिन्छ। दर्शनीय सूर्यदेवजस्तै तिमी पनि प्रकाशित हुन्छौ।

यथा वः स्वाहाग्नये दाशेम परीळाभिर्घृतवद्भिश्च हव्यैः।
तेभिर्नो अग्ने अमितैर्महोभिः शतं पूर्भिरायसीभिर्नि पाहि॥७॥

हे अग्निदेव ! तिम्रा लागि हामी गाईको घिउले युक्त हवि पदार्थ अर्पित गर्दछौं र सेवा गर्दछौं। तिमी पनि प्रसन्न भएर आफ्ना असीमित तेजले उसै किसिमले हाम्रो रक्षा गर, जसरी फलामका बलिया सय किल्लाहरूले मानिसको रक्षा गर्दछन्।

या वा ते सन्ति दाशुषे अधृष्टा गिरो वा याभिर्नृवतीरुरुष्याः।
ताभिर्नः सूनो सहसो नि पाहि स्मत्सूरीञ्जरितॄञ्जातवेदः॥८॥

हे बलका पुत्र, सम्पूर्ण ज्ञानले सम्पन्न अग्निदेव ! तिम्रा प्रदीप्त शिखाले हविदाताको कल्याण गर्छ। तिम्रा तेजस्वी वाणी र ज्वालाले असल सन्तानयुक्त प्रजाको रक्षा गर्दछ।

निर्यत्पूतेव स्वधितिः शुचिर्गात् स्वया कृपा तन्वा३ रोचमानः।
आ यो मात्रोरुशेन्यो जनिष्ट देवयज्याय सुक्रतुः पावकः॥९॥

माताका रूपमा रहेका अरणीहरूका गर्भबाट उत्पन्न तीक्ष्ण शस्त्रजस्ता अग्निदेव यज्ञकर्म गर्न समर्थ छन्। आफ्ना पवित्र ज्वाला प्रदीप्त गरेपछि उनी यस्तो कामनायोग्य प्रिय कर्म गर्न समर्थ हुन्छन्।

एता नो अग्ने सौभगा दिदीह्यपि क्रतुं सुचेतसं वतेम।
विश्वा स्तोतृभ्यो गृणते च सन्तु यूयं पात स्वस्तिभिः सदा नः॥१०॥

हे अग्निदेव ! हामीलाई उत्तम कर्म गर्नका लागि श्रेष्ठ धन प्रदान गर। यज्ञ गर्ने र श्रेष्ठ बुद्धि भएका पुत्रसँग समस्त किसिमका धन ऐश्वर्य हामी उद्गाता र स्तोतालाई प्राप्त होस्। हाम्रो सबै किसिमले तिमी कल्याण गर।

[सूक्त - ४]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- अग्नि। छन्द- त्रिष्टुप्।

प्र वः शुक्राय भानवे भरध्वं हव्यं मतिं चाग्नये सुपूतम्।
यो दैव्यानि मानुषा जनूंष्यन्तर्विश्वानि विद्मना जिगाति॥१॥

हे याजकहरू हो ! सर्वथा शुद्ध एवं पवित्र अग्निदेवलाई उत्तम हवि र श्रेष्ठ स्तोत्र प्रेषित गर। अग्निदेव समस्त देवता, मानिस र प्राणीका अन्तःकरणमा विद्यमान छन्।

स गृत्सो अग्निस्तरुणश्चिदस्तु यतो यविष्ठो अजनिष्ट मातुः।
सं यो वना युवते शुचिदन् भूरि चिदन्ना समिदत्ति सद्यः॥२॥

अग्निदेव महान् ज्ञानी, उत्साही र तरुण छन्। माताका रूपमा रहेका दुई अरणीबाट उत्पन्न हुनेबित्तिकै तेजस्वी र युवा हुन्छन्। उनी वनमा व्याप्त भएर काठ र प्रचुर अन्न शीघ्रताका साथ भक्षण गर्नमा समर्थ छन्।

अस्य देवस्य संसद्यनीके यं मर्तासः श्येतं जगृभ्रे।
निं यो गृभं पौरुषेयीमुवोच दुरोकमग्निरायवे शुशोच ॥३॥

देवताका यज्ञशालामा तेजस्वी अग्निदेवलाई प्रतिष्ठित गरेर मानिसले सेवा गर्छन्। उनी त्यस सेवाबाट प्रसन्न भएर आहुति ग्रहण गर्दै तीव्रताका साथ तेजोमय बन्दछन्। त्यो तेज मानिसका लागि असहनीय हुन्छ।

अयं कविरकविषु प्रचेता मर्तेष्वग्निरमृतो नि धायि।
स मा नो अत्र जुहुरः सहस्वः सदा त्वे सुमनसः स्याम ॥४॥

अमर, ज्ञानवान् र तेजस्वी अग्निदेव अज्ञानी मानिसका बीचमा रहन्छन्। हे बलवान् अग्निदेव ! तिमीलाई धारण गर्नका लागि हामी आफ्नो बुद्धि निरन्तर सचेष्ट राख्छौं। तिमी हाम्रो रक्षा गर।

आ यो योनिं देवकृतं ससाद क्रत्वा ह्य१ ग्निरमृताँ अतारीत्।
तमोषधीश्च वनिनश्च गर्भं भूमिश्च विश्वधायसं बिभर्ति ॥५॥

अग्निदेव स्तोताहरूले बनाएका विशेष स्थानमा स्थापित हुन्छन्। अग्निदेव आफ्ना प्रखर कर्मले अमर देवताहरूलाई सुरक्षित राख्दछन्। सबैलाई पोषण र धारण गर्ने अग्निदेवलाई पृथ्वी, औषधि र वृक्षले पनि आफूभित्र धारण गर्दछन्।

ईशे ह्य१ ग्निरमृतस्य भूरेरीशे रायः सुवीर्यस्य दातोः।
मा त्वा वयं सहसावन्नवीरा माप्सवः परि षदाम मादुवः ॥६॥

अग्निदेव उत्तम अमरत्व प्रदान गर्नमा समर्थ छन्। हे अग्निदेव ! हामी सधैं तिम्रो सेवा गर्दै छौं। तिम्रा कृपाले हामी कहिल्यै पनि वीर पुत्र र सुन्दर रूपबाट विहीन नहोऔं।

परिषद्यं ह्यरणस्य रेक्णो नित्यस्य रायः पतयः स्याम।
न शेषो अग्ने अन्यजातमस्त्यचेतानस्य मा पथो वि दुक्षः ॥७॥

हामी अज्ञानी मानिसले बनाएका मार्गमा हिंडेर ऋणग्रस्त नहोऔं। किनभने अर्काको पुत्र पालेर कोही पुत्रवान् हुँदैन। हामीलाई सधैं अफैंसित रहने धनको स्वामी बनाऊ।

नहि ग्रभायारणः सुशेवोऽन्योदर्यो मनसा मन्तवा उ।
अधा चिदोकः पुनरित्स एत्या नो वाज्यभीषाडेतु नव्यः ॥८॥

पालेको पुत्र सेवा गर्ने र ऋण नबोकाउने भए पनि उसको मन जन्माउनेहरूतिरै जान्छ। पालेका पुत्रले सन्तोष हुँदैन, त्यसैले हे अग्निदेव ! हामीलाई शत्रु जित्नसक्ने पुत्र देऊ।

त्वमग्ने वनुष्यतो नि पाहि त्वमु नः सहसावन्नवद्यात्।
सं त्वा ध्वस्मन्वदभ्येतु पाथः सं रयिः स्पृहयाय्यः सहस्री ॥९॥

हे अग्निदेव ! हामीलाई पापी र हिंस्रकबाट सुरक्षित राख। तिम्रा लागि हामी हविष्यान्न अर्पित गर्दछौं। तिम्रा कृपाले हामीलाई इच्छा लागेको धन प्राप्त होस्।

एता नो अग्ने सौभगा दिदीह्यपि क्रतुं सुचेतसं वतेम।
विश्वा स्तोतृभ्यो गृणते च सन्तु यूयं पात स्वस्तिभिः सदा नः ॥१०॥

हे अग्निदेव ! हामीलाई उत्तम कर्म गर्नका लागि श्रेष्ठ धन प्रदान गर। यज्ञ गर्ने र श्रेष्ठ बुद्धि भएका पुत्रसँग समस्त किसिमका धन ऐश्वर्य हामी उद्गाता र स्तोतालाई प्राप्त होस्। हाम्रो सबै किसिमले तिमी कल्याण गर।

[सूक्त - ५]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- वैनाश्वर अग्नि। छन्द- त्रिष्टुप्।

प्राग्नये तवसे भरध्वं गिरं दिवो अरतये पृथिव्याः।
यो विश्वेषाममृतानामुपस्थे वैश्वानरो वावृधे जागृवद्भिः ॥१॥

समस्त देवताहरूका उपस्थितिमा वैश्वानर अग्निदेवलाई प्रज्वलित गरेर बढाइन्छ। उनै बढेका अग्निदेव द्युलोक र पृथिवीलोकमा विचरण गर्दछन्। हे मानिसहरू हो ! उनै अग्निदेवको स्तुति गर।

पृष्टो दिवि धाय्यग्निः पृथिव्यां नेता सिन्धूनां वृषभः स्तियानाम्।
स मानुषीरभि विशो वि भाति वैश्वानरो वावृधानो वरेण ॥२॥

वैश्वानर अग्निदेव मानिसहरूका बीचमा प्रकाशित छन्। उनै अग्निदेव श्रेष्ठ हविद्वारा द्युलोक र

भूलोकमा स्थापित भएका छन्। राम्रो रीतिले पूजित, सबैको कल्याण गर्ने अग्निदेव प्रसन्न भएर जल बर्साउँछन् र नदीलाई जलले भरेर प्रवाहित गर्दछन्।

**त्वद्भिया विश आयन्नसिक्नीरसमना जहतीर्भोजनानि।**
**वैश्वानर पूरवे शोशुचानः पुरो यदग्ने दरयन्नदीदेः ॥३॥**

हे अग्निदेव ! तेजले प्रदीप्त भएपछि तिमीले पुरु राजाका शत्रुको सहर ध्वस्त पारेका थियौ। त्यस बेला दुष्ट कर्म गर्नेहरू खानपिन छोडेर जताततै भागेका थिए।

**तव त्रिधातु पृथिवी उत द्यौर्वैश्वानर व्रतमग्ने सचन्त।**
**त्वं भासा रोदसी आ ततन्थाजस्रेण शोचिषा शोशुचानः ॥४॥**

हे अग्निदेव ! तिमी विशिष्ट आभाले प्रकाशित भएर द्युलोकर पृथिवीलोकलाई विस्तृत गर्दछौ। तीनै लोकका निवासीहरू तिम्रो व्रत पालन गर्दछन्।

**त्वामग्ने हरितो वावशाना गिरः सचन्ते धुनयो घृताचीः।**
**पतिं कृष्टीनां रथ्यं रयीणां वैश्वानरमुषसां केतुमह्नाम् ॥५॥**

हे अग्निदेव ! तिमी किसानका स्वामी, धनका सञ्चालक उषासँगै रहने दिनको प्रतीक चिह्न हौ। घोडा, पापनाशक वाणी र घिएका आहुतिले तिम्रो सेवा गर्दछन्।

**त्वे असुर्यं१ वसवो न्यृण्वन्क्रतुं हि ते मित्रमहो जुषन्त।**
**त्वं दस्यूँरोकसो अग्न आज उरु ज्योतिर्जनयन्नार्याय ॥६॥**

हे अग्निदेव ! तिमीलाई वसुहरूले विलक्षण बल प्रदान गरेर बलवान् बनाएका हुन्। तिमी मित्रहरूका सहायक हौ। असल कर्म गर्ने आर्यको रक्षा गर्नका लागि तिमीले प्रखर तेजद्वारा भयभीत पार्दै दस्युलाई भगायौ।

**स जायमानः परमे व्योमन्वायुर्न पाथः परि पासि सद्यः।**
**त्वं भुवना जनयन्नभि क्रन्नपत्याय जातवेदो दशस्यन् ॥७॥**

हे अग्निदेव ! अन्तरिक्षमा सूर्यरूपले प्रकट भएपछि सोमरस वाष्पीकरण गरेर सबैभन्दा पहिले तिमी ग्रहण गर्दछौ। हे ज्ञानरूपी अग्निदेव ! तिमी भुवनमा जल प्रकट गर्दछौ। तिम्रो विद्युत् रूप देखेर र गडगड ध्वनिको गर्जन सुनेर अन्नको कामना गर्ने व्यक्तिहरू आशान्वित हुन्छन्।

**तामग्ने अस्मे इषमेरयस्व वैश्वानर द्युमतीं जातवेदः।**
**यया राधः पिन्वसि विश्ववार पृथु श्रवो दाशुषे मर्त्याय ॥८॥**

हे पूर्ण ज्ञानले सम्पन्न अग्निदेव ! तिमी समस्त मानवद्वारा वरण गरिन्छौ। उनीहरूलाई यश प्रदान गर्दछौ। बिजुलीसहित वर्षालाई हाम्रा निम्ति प्रेरित गर। त्यसबाट हाम्रो अन्न र धन वृद्धि होस्।

**तं नो अग्ने मघवद्भ्यः पुरुक्षुं रयिं नि वाजं श्रुत्यं युवस्व।**
**वैश्वानर महि नः शर्म यच्छ रुद्रेभिरग्ने वसुभिः सजोषाः ॥९॥**

हे सबै मानिसहरूका हितैषि अग्निदेव ! रुद्र र वसुहरूसँगै तिमी हाम्रो कल्याण गर। हामी याजकहरू तिम्रा लागि हवि अर्पित गर्दछौं। हामीलाई तिमी यशवर्द्धक अन्न, धन र बल प्रदान गर।

## [सूक्त - ६]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता**- वैनाश्वर अग्नि। **छन्द**- त्रिष्टुप्।

**प्र सम्राजो असुरस्य प्रशस्तिं पुंसः कृष्टीनामनुमाद्यस्य।**
**इन्द्रस्येव प्र तवसस्कृतानि वन्दे दारुं वन्दमानो विवक्मि ॥१॥**

शत्रुका सहर ध्वस्त गर्ने वीरलाई हामी वन्दना गर्दछौं। असुर र वीर मानिसले स्तुति गरका सम्राट् इन्द्रजस्ता बलवान् अग्निका कार्यको हामी स्तुति र बयान गर्दछौं।

**कविं केतुं धासिं भानुमद्रेर्हिन्वन्ति शं राज्यं रोदस्योः।**
**पुरन्दरस्य गीर्भिरा विवासेऽग्नेर्व्रतानि पूर्व्या महानि ॥२॥**

अग्निदेव विद्वान् कवि, ध्वजास्वरूप, मेघ धारण गर्ने र सबैको कल्याण गर्ने हुन्। द्यावापृथिवीका असल शासक अग्निदेव नै हुन्। परम पुरुषार्थी, शत्रुका किल्ला ध्वस्त पार्ने र पुरातन अग्निदेवको हामी यशोगान गर्दछौं।

न्यक्रतून् ग्रथिनो मृधवाचः पणींरश्रद्धाँ अवृधाँ अयज्ञान्।
प्रप्र तान्दस्यूँरग्निर्विवाय पूर्वश्चकारापराँ अयज्यून् ॥३॥

अकर्मी, फट्याइँ बोल्ने, कटुवक्ता, कन्जुस, श्रद्धाविहीन, यज्ञ नगर्ने र पतितहरूलाई प्रगतिहीन बनाएर अग्निदेवले पर पुऱ्याउँछन्। देवताको यज्ञ नगर्नेलाई यिनी प्रगतिमा कान्छो बनाइदिन्छन्।

यो अपाचीने तमसि मदन्तीः प्राचीश्चकार नृतमः शचीभिः।
तमीशानं वस्वो अग्निं गृणीषेऽनानतं दमयन्तं पृतन्यून् ॥४॥

अन्धकारमा डुबेका मान्छेलाई अग्निदेव प्रकाशरूपी ज्ञानद्वारा असल मार्गमा हिँड्ने प्रेरणा दिन्छन्। हामी यस्ता शत्रुनाशक र धनका स्वामी अग्निदेवको स्तुति गर्दछौँ।

यो देह्योऽ३ अनमयद्वधस्नैर्यो अर्यपत्नीरुषसश्चकार।
स निरुध्या नहुषो यह्वो अग्निर्विशश्चक्रे बलिहृतः सहोभिः ॥५॥

अग्निदेवका हतियारले आसुरी मायाजाल भुकाएर सूर्यकी पत्नीका रूपमा उषालाई उत्पन्न गराए। उनै अग्निदेवले आफ्ना प्रतिरोधक शक्तिद्वारा प्रजालाई मुक्त गराए र ती प्रजालाई नहुषका लागि कर तिर्न योग्य बनाए।

यस्य शर्मन्नुप विश्वे जनास एवैस्तस्थुः सुमतिं भिक्षमाणाः।
वैश्वानरो वरमा रोदस्योराग्निः ससाद पित्रोरुपस्थम् ॥६॥

हविदाताहरूको सत्कर्म सद्बुद्धिको कामना गर्दै वैश्वानर अग्निदेवका नजिकै उपस्थित हुन्छ। समस्त प्राणीका हितैषि अग्निदेव द्यावापृथिवीका माझमा उत्पन्न हुन्छन्।

आ देवो ददे बुध्न्याऽ३ वसूनि वैश्वानर उदिता सूर्यस्य।
आ समुद्रादवरादा परस्मादाग्निर्ददे दिव आ पृथिव्याः ॥७॥

वैश्वानर अग्निदेव सूर्यका रूपमा प्रकट भएर अन्धकार नाश गर्दछन्। अन्तरिक्ष र द्यावापृथिवीबाट अन्धकार समाप्त गर्दछन्।

[सूक्त - ७]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- अग्नि। छन्द- त्रिष्टुप्।

प्र वो देवं चित् सहसानमग्निमश्वं न वाजिनं हिषे नमोभिः।
भवा नो दूतो अध्वरस्य विद्वान्त्मना देवेषु विविदे मितद्रुः ॥१॥

हे अग्निदेव ! तिमी देवताहरूका बीचमा रुख ढळाउनका लागि ख्याति प्राप्त छौ। तिमी यज्ञमा सर्वज्ञ भएर अश्वजस्तै तीव्र गतिले असुर आदिलाई लखेट्दछौ।

आ याह्यग्ने पथ्याऽ३नु स्वा मन्द्रो देवानां सख्यं जुषाणः।
आ सानु शुष्मैर्नदयन्पृथिव्या जम्भेभिर्विश्वमुशधग्वनानि ॥२॥

हे अग्निदेव ! तिमी अति आनन्दित हुँदै देवतासित मित्रता गर। तिमी द्यावापृथिवीका माथिल्लो भागलाई आफ्ना शोषक तेजले ध्वनित गराउँदै र वनलाई ज्वालाले भस्म गर्दै आफ्ना मार्गबाट आऊ।

प्राचीनो यज्ञः सुधितं हि बर्हिः प्रीणीते अग्निरीडितो न होता।
आ मातरा विश्ववारे हुवानो यतो यविष्ठ जज्ञिषे सुशेवः ॥३॥

यज्ञभन्दा पहिले कुश राम्ररी ओछ्याऔं। विश्वका मातापितालाई आह्वान गरौं। यज्ञका अग्निलाई राम्ररी सेवा गर्दै उनलाई युवा रूपमा प्रज्वलित गरौं। हविदाताले प्रसन्न मनले आहुति समर्पित गर्दै अग्निदेवलाई सन्तुष्ट पारौं।

सद्यो अध्वरे रथिरं जनन्त मानुषासो विचेतसो य एषाम्।
विशामधायि विश्पतिर्दुरोणेऽग्निर्मन्द्रो मधुवचा ऋतावा ॥४॥

विशेषज्ञहरू रथमा आरूढ भएका अग्निदेवलाई शीघ्रतापूर्वक उत्पन्न गर्दछन्। त्यसपछि सत्यनिष्ठ एवं मधुरभाषी अग्निदेव प्रजाका घरमा रहेर हवि ग्रहण गर्दछन् र प्रसन्न भएर सबैलाई आनन्द प्रदान गर्दछन्।

असादि वृतो वह्निराजगन्वानग्निर्ब्रह्मा नृषदने विधर्ता।
द्यौश्च यं पृथिवी वावृधाते आ यं होता यजति विश्ववारम् ॥५॥

प्रजाका घरमा रहने अग्निदेव होताद्वारा पूजित हुन्छन्। उनलाई द्युलोक र भूलोकले बढाउँछन्। अग्निदेव हविदाताको हव्य वहन गरेर ब्रह्मा आदि देवतासम्म पुऱ्याउँछन्।

एते द्युम्नेभिर्विश्वमातिरन्त यन्त्रं ये वारं नर्या अतक्षन्।
प्र ये विशस्तिरन्त श्रोषमाणा आ ये मे अस्य दीधयन्नृतस्य॥६॥

मानिसहरू यज्ञका निम्ति अग्निदेवलाई प्रज्वलित गरेर मन्त्रले संस्कारित गर्दछन्। उनै अग्निदेव अन्नले हाम्रो पोषण सबै किसिमले गर्दछन्।

नू त्वामग्न ईमहे वसिष्ठा ईशानं सूनो सहसो वसूनाम्।
इषं स्तोतृभ्य मघवद्भ्य आनड्यूयं पात स्वस्तिभिः सदा नः॥७॥

हे अग्निदेव ! तिमी बलवाट उत्पन्न र वसुहरूका स्वामी हौ। हामी सबै वसिष्ठ गोत्रीय होताहरू तिम्रा निम्ति हवि समर्पित गर्दछौं। हविदाता र स्तोतालाई तिमी सुरक्षा प्रदान गर्दै अन्न आदिले परिपूर्ण गराऊ।

[सूक्त - ८]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- अग्नि। छन्द- त्रिष्टुप्।

इन्धे राजा समर्यो नमोभिर्यस्य प्रतीकमाहुतं घृतेन।
नरो हव्येभिरीडते सबाध आग्निरग्र उषसामशोचि॥१॥

असल शासकजस्ता अग्निदेवलाई वन्दनापूर्वक प्रज्वलित गर्दै छौं। मानिसहरू निरन्तर आहुतिले अग्निदेवको यजन गर्दछन् र घिउले संवर्द्धन गर्छन्। अग्निदेव उषाहरूभन्दा पहिले प्रकाशित हुन्छन्।

अयमु ष्य सुमहाँ अवेदि होता मन्द्रो मनुषो यह्वो अग्निः।
वि भा अकः ससृजानः पृथिव्यां कृष्णपविरोषधीभिर्ववक्षे॥२॥

अग्निदेव महान् छन्। प्रसन्न भएर फैलँदै गरेका अग्निदेव आफ्नो दीप्ति फैलाउँछन्। कालो धुवाँरूपी मार्गमा हिँड्ने अग्निदेव पृथ्वीमा औषधिद्वारा वृद्धि हुन्छन्।

कया नो अग्ने वि वसः सुवृक्तिं कामु स्वधामृणवः शस्यमानः।
कदा भवेम पतयः सुदत्र रायो वन्तारो दुष्टरस्य साधोः॥३॥

हे अग्निदेव ! कुन हविरूपी द्रव्य अर्पण गरेपछि हाम्रो स्तुति स्वीकार गर्दछौ ? हे उत्तम दानदाता अग्निदेव ! हामीलाई कहिले दुर्लभ धन प्राप्त होला र कहिले हामी त्यो धन बाँड्न सकौंला ?

प्रप्रायमग्निर्भरतस्य शृण्वे वि यत्सूर्यो न रोचते बृहद्भाः।
अभि यः पूरुं पृतनासु तस्थौ द्युतानो दैव्यो अतिथिः शुशोच॥४॥

हविष्यान्न प्रदान गर्ने याजकको निमन्त्रणा स्वीकार गर्ने देवताहरूका अतिथि अग्निदेव अति तेजस्वी भएर सूर्यदेवजत्तिकै प्रकाश फैलाउँछन्। पुरुलाई पराजित गर्ने अग्निदेव हाम्रा लागि कल्याणकारी भावले युक्त भएर प्रज्वलित हुन्छन्।

असन्नित्त्वे आहवनानि भूरि भुवो विश्वेभिः सुमना अनीकैः।
स्तुतश्चिदग्ने शृण्विषे गृणानः स्वयं वर्धस्व तन्वं सुजात॥५॥

हे अग्निदेव ! तिम्रो जन्म असल किसिमले भएको छ, तेज धारण गरेर प्रसन्न होऊ। पर्याप्त आहुति ग्रहण गरेर तिम्रो शरीर विस्तृत होस्, स्तुति सुनेर हर्षित होऊ।

इदं वचः शतसाः संसहस्रमुदग्नये जनिषीष्ट द्विबर्हाः।
शं यत्स्तोतृभ्य आपये भवाति द्युमदमीवचातनं रक्षोहा॥६॥

हजारौं गाईका स्वामी र सयौं गाई दान गर्ने, कर्मको मर्म बुझेका विशिष्ट विद्याको ज्ञान भएका, महान् ऋषि वसिष्ठले अग्निदेवलाई यसै स्तोत्रले स्तुति गरे।

नू त्वामग्न ईमहे वसिष्ठा ईशानं सूनो सहसो वसूनाम्।
इषं स्तोतृभ्यो मघवद्भ्य आनड्यूयं पात स्वस्तिभिः सदा नः॥७॥

हे अग्निदेव ! तिमी बलवाट उत्पन्न र वसुहरूका स्वामी हौ। हामी सबै वसिष्ठ गोत्रीय होताहरू तिम्रा निम्ति हवि समर्पित गर्दछौं। हविदाता र स्तोतालाई सुरक्षा प्रदान गर्दै अन्न आदिले परिपूर्ण गराऊ।

[सूक्त - ९]

ऋषि - वसिष्ठ मैत्रावरुणि । देवता- अग्नि । छन्द- त्रिष्टुप् ।

**अबोधि जार उषसामुपस्थाद्धोता मन्द्रः कवितमः पावकः ।**
**दधाति केतुमुभयस्य जन्तोर्हव्या देवेषु द्रविणं सुकृत्सु ॥१॥**

पापरूपी अन्धकार जीर्ण गराउने र जार, विद्वान् होता आदिलाई पवित्र गराउने हर्षप्रद अग्निदेव उषा कालमा जागृत भएका छन्। अग्निदेव देवता र मानिस दुवैलाई प्रज्ञावान् बनाउँछन्। देवताका लागि हवि प्रदान गर्ने र सत्कर्म गर्नेहरूलाई धन प्रदान गर्दछन्।

**स सुक्रतुर्यो वि दुरः पणीनां पुनानो अर्कं पुरुभोजसं नः ।**
**होता मन्द्रो विशां दमूनास्तिरस्तमो ददृशे राम्याणाम् ॥२॥**

श्रेष्ठ कर्ममा लागेका अग्निदेवले पणि नामका कन्जुस व्यापारीको ढोका खोलेर गाई मुक्त गराए। उनै पूजनीय, दुधालु गाईको समूह खोज्ने र देवतालाई आनन्द प्रदान गर्ने अग्निदेव संयमित मनले रहनेहरूका लागि रातको अन्धकार नाश गराउँछन्।

**अमूरः कविरदितिर्विवस्वान्त्सुसंसन्मित्रो अतिथिः शिवो नः ।**
**चित्रभानुरुषसां भात्यग्रेऽपां गर्भः प्रस्व१ आ विवेश ॥३॥**

मूर्खभन्दा भिन्न, ज्ञानी, दुःखबाट मुक्त, मित्र, पूज्य, तेजस्वी, मङ्गलकारी, विशेष रूपले प्रकाशित अग्निदेव उषाभन्दा पहिले प्रकाशित हुन्छन्। त्यस्ता अग्निदेव जलका गर्भमा उत्पन्न भएर औषधिमा प्रवेश गर्दछन्।

**ईडेन्यो वो मनुषो युगेषु समनगा अशुचज्जातवेदाः ।**
**सुसन्दृशा भानुना यो विभाति प्रति गावः समिधानं बुधन्त ॥४॥**

हे अग्निदेव ! मानिसले यज्ञकर्म गर्दा तिम्रो स्तुति गर्दछन्। सबै विषयको ज्ञान भएका अग्निदेव सङ्ग्रामका समयमा प्रदीप्त हुन्छन् र दर्शनीय आभाले सुशोभित हुन्छन्। मौलाउने अग्निदेवलाई स्तुतिले प्रेरित गर्दछ।

**अग्ने याहि दूत्यं१ मा रिषण्यो देवाँ अच्छा ब्रह्मकृता गणेन ।**
**सरस्वतीं मरुतो अश्विनापो यक्षि देवान् रत्नधेयाय विश्वान् ॥५॥**

हे अग्निदेव ! तिमी दौत्य कर्मका निम्ति देवतासमक्ष जाऊ। हे अग्निदेव ! हामी समूहमा रहने स्तोतालाई नमार। हामीलाई रत्न दान गर्नका लागि सरस्वती, मरुत्‌गण र सबै देवताहरूको यजन गर।

**त्वामग्ने समिधानो वसिष्ठो जरूथं हन्यक्षि राये पुरन्धिम् ।**
**पुरुणीथा जातवेदो जरस्व यूयं पात स्वस्तिभिः सदा नः ॥६॥**

हे अग्निदेव ! तिमी कटुभाषी असुर संहार गर। हामी सबै वसिष्ठ गोत्रीय होताहरू तिम्रा निम्ति समिधा समर्पित गर्दछौं। स्तोत्रद्वारा तिमी देवताहरूलाई सन्तुष्ट गराऊ र हाम्रो कल्याण गर।

[सूक्त - १०]

ऋषि - वसिष्ठ मैत्रावरुणि । देवता- अग्नि । छन्द- त्रिष्टुप् ।

**उषो न जारः पृथु पाजो अश्रेद्दविद्युतद्दीद्यच्छोशुचानः ।**
**वृषा हरिः शुचिरा भाति भासा धियो हिन्वान उशतीरजीगः ॥१॥**

उषाको प्रभाव जीर्ण गराउने जारजस्ता सूर्यदेवजत्तिकै तेजको आश्रय लिएका अग्निदेव विस्तृत हुन्छन्। विद्युत्‌जस्तै चमक भएका, देदीप्यमान, शोभनीय, कामनापूरक, दुःख-निवारक, पवित्र अग्निदेव कर्मलाई प्रेरित गर्दै आफ्नो आभाले प्रकाशित हुन्छन्।

**स्व१र्ण वस्तोरुषसामरोचि यज्ञं तन्वाना उशिजो न मन्म ।**
**अग्निर्जन्मानि देव आ वि विद्वान्द्रवद् दूतो देवयावा वनिष्ठः ॥२॥**

उषाका अधिष्तिर अग्निदेव दिउँसोका सूर्यजस्तै सुशोभित हुन्छन्। सुखको कामना गर्ने ऋत्विक्‌हरू मननीय स्तोत्र गाउँदै यज्ञ विस्तार गर्दछन्। विद्वान्, देवताका दूतरूपी अग्निदेव देवताका निकट जान्छन् र प्राणीलाई प्रभावित गराउँछन्।

अच्छा गिरो मतयो देवयन्तीरग्निं यन्ति द्रविणं भिक्षमाणाः।
सुसन्दृशं सुप्रतीकं स्वञ्चं हव्यवाहमरतिं मानुषाणाम् ॥३॥

देवत्व प्राप्तिको इच्छा भएको बुद्धि र धनको याचना गर्ने वाणी अग्निदेवसम्म पुग्दछ। अग्निदेव हवि लिएर जाने सुन्दर दर्शनीय छन् र मानिसहरूका स्वामी हुन्।

इन्द्रं नो अग्ने वसुभिः सजोषा रुद्रं रुद्रेभिरा वहा बृहन्तम्।
आदित्येभिरदितिं विश्वजन्यां बृहस्पतिमृक्वभिर्विश्ववारम् ॥४॥

हे अग्निदेव ! वसुहरूसँग इन्द्रदेवलाई, आदित्यहरूसँग विश्वकी माता अदितिलाई, स्तुत्य अङ्गिराहरूसँग श्रेष्ठ बृहस्पतिदेवलाई र रुद्रहरूसँग रुद्रदेवलाई आह्वान गर।

मन्द्रं होतारमुशिजो यविष्ठमग्निं विश ईडते अध्वरेषु।
स हि क्षपावाँ अभवद्रयीणामतन्द्रो दूतो यजथाय देवान् ॥५॥

धनको कामना गर्ने मानिसहरू स्तुति योग्य, होता र युवा अग्निदेवलाई यज्ञमा स्तुति गर्दछन्। अग्निदेव रातमा पनि प्रकाशित हुन्छन् र देवयज्ञमा हवि प्रदान गर्ने देवताका लागि तन्द्रारहित र फुर्तिला दूत हुन्।

[सूक्त - ११]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- अग्नि। छन्द- त्रिष्टुप्।

महाँ अस्यध्वरस्य प्रकेतो न ऋते त्वदमृता मादयन्ते।
आ विश्वेभिः सरथं याहि देवैर्न्यग्ने होता प्रथमः सदेह ॥१॥

हे अग्निदेव ! तिमी ध्वजाझैं भएर यज्ञको सूचना गर्दछौ। तिमी महान् छौ, समस्त देवताहरूसँग रथमा आरुढ भई आएर प्रथम होताका रूपमा कुशको आसन ग्रहण गर। तिमीविना देवताहरू हर्षित हुँदैनन्।

त्वामीडते अजिरं दूत्याय हविष्मन्तः सदमिन्मानुषासः।
यस्य देवैरासदो बर्हिरग्नेऽहान्यस्मै सुदिना भवन्ति ॥२॥

हे अग्निदेव ! तिमी प्रगतिशील छौ। दूतझैं भएर काम गर भन्दै हवि दान गर्ने मानिस सधैं तिमीसित विन्ति गर्दछन्। देवताहरूसँग जुन याजकका कुशका आसनमा तिमी बस्दछौ, उसका आउँदा दिनहरू सप्रिन्छन्।

त्रिश्चिदक्तोः प्र चिकितुर्वसूनि त्वे अन्तर्दाशुषे मर्त्याय।
मनुष्वदग्न इह यक्षि देवान्भवा नो दूतो अभिशस्तिपावा ॥३॥

हे अग्निदेव ! ऋत्विकहरू मानिसको हितका लागि दिनमा तीन पटक तिमीलाई हवि अर्पित गर्दछन्। मनुका यज्ञमा जसरी दूत बनेका थियौ, हाम्रा यज्ञमा पनि उसरी नै दूत बनेर हामीलाई दुष्कृत्यरूपी शत्रुबाट जोगाऊ।

अग्निरीशे बृहतो अध्वरस्याग्निर्विश्वस्य हविषः कृतस्य।
क्रतुं ह्यस्य वसवो जुषन्ताथा देवा दधिरे हव्यवाहम् ॥४॥

अग्निदेव यज्ञ र समस्त आहुतिका पति हुन्। देवताहरूले अग्निदेवलाई हवि वहन गर्ने बनाएका छन्। यिनै अग्निदेवको सेवा वसुहरूले गर्दछन्।

आग्ने वह हविरद्याय देवानिन्द्रज्येष्ठास इह मादयन्ताम्।
इमं यज्ञं दिवि देवेषु धेहि यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

हे अग्निदेव ! तिमी हविष्यान्न ग्रहण गर्नका लागि देवतालाई आमन्त्रित गर। तिमी यस यज्ञलाई वहन गरेर स्वर्गलोकसम्म पुर्‍याइदेऊ। यज्ञका प्रमुख इन्द्रदेव हर्षित होऊन्। सबै देवताहरूले हाम्रो रक्षा र कल्याण गरुन्।

[सूक्त - १२]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- अग्नि। छन्द- त्रिष्टुप्।

अगन्म महा नमसा यविष्ठं यो दीदाय समिद्धः स्वे दुरोणे।
चित्रभानुं रोदसी अन्तरुर्वी स्वाहुतं विश्वतः प्रत्यञ्चम् ॥१॥

आफ्नो स्थानमा प्रदीप्त अग्निदेव आकाश र पृथ्वीका मध्य भागमा विशेष रूपले दीप्तिमान् भएका

छन्। उत्तम आहुतिले युक्त, सर्वत्र व्याप्त, चिरयुवा अग्निदेवलाई श्रद्धापूर्वक नमस्कार गर्दै हामी उनको आश्रय प्राप्त गर्दछौं।

**स मह्ना विश्वा दुरितानि साह्वानग्निः ष्टवे दम आ जातवेदाः।**
**स नो रक्षिषद् दुरितादवद्यादस्मान्गृणत उत नो मघोनः ॥२॥**

आफ्ना महान् तेजले समस्त पाप नष्ट गर्ने, ज्ञानरूपी प्रकाश विस्तार गराउने अग्निदेव यज्ञशालामा प्रतिष्ठित हुन्छन्। स्तुत्य अग्निदेव हामीलाई दोषपूर्ण र निन्दित कर्मबाट जोगाउँछन् र आहुति स्वीकार गरेर हाम्रो योगक्षेम वहन गर्दछन्।

**त्वं वरुण उत मित्रो अग्ने त्वां वर्धन्ति मतिभिर्वसिष्ठाः।**
**त्वे वसु सुषणनानि सन्तु यूयं पात स्वस्तिभिः सदा नः ॥३॥**

हे अग्निदेव ! तिमी कामना पूरा गर्ने वरुणका रूप र स्नेहपूर्वक सहयोग गर्ने मित्रका रूप हौं। ऋत्विक्हरू विशिष्ट एवं श्रेष्ठ स्तुतिले तिमीलाई गौरवान्वित गराउँछन्। तिमी असल धन र कल्याणकारी साधनले हाम्रो रक्षा गर।

[सूक्त - १३]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - वैश्वानर अग्नि। **छन्द** - त्रिष्टुप्।

**प्राग्नये विश्वशुचे धियन्धेऽसुरघ्ने मन्म धीतिं भरध्वम्।**
**भरे हविर्न बर्हिषि प्रीणानो वैश्वानराय यतये मतीनाम् ॥१॥**

सबैलाई प्रेरणा दिने, यज्ञरूपी कर्म धारण गर्ने, असुर संहार गर्ने अग्निदेवका निम्ति हामी स्तुतिसहित यज्ञ गर्दै छौं। प्रसन्न भएर उनले हाम्रा मनोकामना पूरा गराऊन्।

**त्वमग्ने शोचिषा शोशुचान आ रोदसी अपृणा जायमानः।**
**त्वं देवाँ अभिशस्तेरमुञ्चो वैश्वानर जातवेदो महित्वा ॥२॥**

हे अग्निदेव ! उत्पन्न हुनासाथ तिम्रा महिमाले शत्रुबाट देवताको रक्षा गरेको थियो।

**जातो यदग्ने भुवना व्यख्यः पशून्न गोपा इर्यः परिज्मा।**
**वैश्वानर ब्रह्मणे विन्द गातुं यूयं पात स्वस्तिभिः सदा नः ॥३॥**

हे वैश्वानर अग्निदेव ! उत्पन्न हुनासाथ तिमी सर्वप्रेरक एवं सर्वत्रगामी भएर पशुको सुरक्षा गर्दछौ। तिमी ज्ञान दान गर्नका लागि मार्ग खोज्दै भुवनको निरीक्षण गर्दछौ। सधैं हाम्रो पालन र कल्याण गर।

[सूक्त - १४]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप् १ - बृहती।

**समिधा जातवेदसे देवाय देवहूतिभिः।**
**हविर्भिः शुक्रशोचिषे नमस्विनो वयं दाशेमाग्नये ॥१॥**

हामी हविदाता सर्वज्ञानसम्पन्न अग्निदेवलाई समिधाले सेवा गर्दछौं। हामी हविरूपी द्रव्यसँगै स्तोत्र गाएर शुभ्र आभासम्पन्न अग्निदेवको सेवा गर्दछौं।

**वयं ते अग्ने समिधा विधेम वयं दाशेम सुष्टुती यजत्र।**
**वयं घृतेनाध्वरस्य होतर्वयं देव हविषा भद्रशोचे ॥२॥**

हे पूजनीय अग्निदेव ! हामी समिधाले तिम्रो सेवा र उत्तम स्तुतिले पूजा गर्दछौं। हे यज्ञका होता अग्निदेव ! हामी घिउले तिम्रो सेवा गर्दछौं। हे मङ्गलकारी प्रदीप्त ज्वाला भएका अग्निदेव ! हामी हविरूपी द्रव्यद्वारा तिम्रो सेवा गर्दछौं।

**आ नो देवेभिरुप देवहूतिमग्ने याहि वषट्कृतिं जुषाणः।**
**तुभ्यं देवाय दाशतः स्याम यूयं पात स्वस्तिभिः सदा नः ॥३॥**

हे अग्निदेव ! वषट् भन्दै दिएको अन्नरूपी हवि स्वीकार गर। तिमी देवताहरूसँग हाम्रा यज्ञमा आऊ। हे देव ! हामी तिम्रो सेवा गरौं। तिमी हाम्रो पालन र कल्याण गर।

[सूक्त - १५]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - अग्नि। **छन्द** - गायत्री।

**अपसद्याय मीढ्हुष आस्ये जुहुता हविः। यो नो नेदिष्ठमाप्यम् ॥१॥**

हे ऋत्विक्हरू हो ! मित्रका रूपमा अग्निदेव हाम्रा अत्यन्त नजिकै रहन्छन्। तिनका मुखमा हवि अर्पित गर।

**यः पञ्च चर्षणीरभि निषसाद दमेदमे। कविर्गृहपतिर्युवा ॥२॥**

हे ज्ञानी, गृहपति तरुण अग्निदेव ! तिमी पाँचै वर्गसमक्ष प्रत्येक घरमा प्रतिष्ठित छौ।

**स नो वेदो अमात्यमग्नी रक्षतु विश्वतः। उतास्मान्पात्वंहसः ॥३॥**

अत्यन्त कल्याणकारी अग्निदेव धनको रक्षा गर्न हाम्रा सहायक होऊन् र हामीलाई पापबाट पर राखून्।

**नवं नु स्तोममग्नये दिवः श्येनाय जीजनम्। वस्वः कुविद्वनाति नः ॥४॥**

द्युलोकका शीघ्रगामी श्येन पक्षीजस्तै अग्निदेवका लागि हामी स्तोताहरू नयाँ स्तोत्र प्रस्तुत गर्दछौं, उनले हामीलाई मनग्गे धन प्रदान गरुन्।

**स्पार्हा यस्य श्रियो दृशे रयिर्वीरवतो यथा। अग्रे यज्ञस्य शोचतः ॥५॥**

अग्निको देदीप्यमान शिखा यज्ञका अग्रभागमा उसरी नै सुशोभित देखिन्छ, जसरी पुत्रवान् याजक धनले शोभनीय हुन्छ।

**सेमां वेतु वषट्कृतिमग्निर्जुषत नो गिरः। यजिष्ठो हव्यवाहनः ॥६॥**

यजनीय हविरूपी द्रव्य वहने गर्ने अग्निदेवले हामीद्वारा अर्पित वषट्कार स्तोत्र स्वीकार गरुन् र हाम्रो प्रार्थना सुनून्।

**नि त्वा नक्ष्य विश्पते द्युमन्तं देव धीमहि। सुवीरमग्न आहुत ॥७॥**

हे आभायुक्त सुवीर अग्निदेव ! तिमीलाई हामी यहाँ प्रतिष्ठित गराउँछौं। हे उपास्य संसारका स्वामी ! तिमीलाई याजकहरू बोलाउँछन्।

**क्षप उस्रश्च दीदिहि स्वग्नयस्त्वया वयम्। सुवीरस्त्वमस्मयुः ॥८॥**

तिमी रात र दिनमा प्रदीप्त होऊ। हे अग्निदेव ! तिमीबाट नै हामी उत्तम धनले सम्पन्न हुन्छौं। तिमी हाम्रा सुन्दर स्तोत्रले प्रसन्न होऊ।

**उप त्वा सातये नरो विप्रासो यन्ति धीतिभिः। उपाक्षरा सहस्रिणी ॥९॥**

विप्रहरू बुद्धिपूर्वक कर्म गरेर तिमीकहाँ धन पाउनका लागि पुग्दछन्। सहस्र अक्षर भएका वाणी पनि तिमीकहाँ पुग्दछन्।

**अग्नी रक्षांसि सेधति शुक्रशोचिरमर्त्यः। शुचिः पावक ईड्यः ॥१०॥**

सफा आभायुक्त, अमर, पवित्र र शुद्ध गराउने अग्निदेव असुर नाश गर्दछन्। ती स्तुति गर्न योग्य देवता हुन्।

**स नो राधांस्या भरेशानः सहसो यहो। भगश्च दातु वार्यम् ॥११॥**

हे बलका पुत्र अग्निदेव ! समस्त विश्वका अधिपति हुनाले हामीलाई उत्तम धन प्रदान गर। भगदेवले पनि हामीलाई धन प्रदान गरुन्।

**त्वमग्ने वीरवद्यशो देवश्च सविता भगः। दितिश्च दाति वार्यम् ॥१२॥**

हे अग्निदेव ! युद्धमा हामीभन्दा विपरीत नहोऊ। भरियाले भारी उचालेर ल्याएझैं शत्रुबाट जितेर एकत्र गरेको सम्पदा ल्याएर हामीलाई प्रदान गर।

**अग्ने रक्षा णो अंहसः प्रति ष्म देव रीषतः। तपिष्ठैरजरो दह ॥१३॥**

हे अग्निदेव ! हामीलाई पापबाट बचाऊ। हाम्रो रक्षा गरेर तिमी आफ्ना अजरअमर र प्रखर तेजले हिंस्रक शत्रुको कामना भस्मीभूत गराऊ।

**अधा मही न आयस्यनाधृष्टो नृपीतये। पूर्भवा शतभुजिः ॥१४॥**

हे शत्रुद्वारा आक्रान्त नहुने अग्निदेव ! हामी मानिसको सुरक्षाका लागि सयौं किसिमका विशेषताले युक्त फलामझैं बलियो नगर तिमी बनाऊ।

**त्वं न पाह्यंहसो दोषावस्तरघायतः। दिवा नक्तमदाभ्य ॥१५॥**

हे अदम्य अग्निदेव ! हामीलाई पापबाट बचाऊ र दिन एवं रातका समयमा दुष्ट शत्रुबाट हाम्रो रक्षा गर।

[सूक्त - १६]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- अग्नि। छन्द- प्रगाथ।

**एना वो अग्निं नमसोर्जो नपातमा हुवे।**
**प्रियं चेतिष्ठमरतिं स्वध्वरं विश्वस्य दूतममृतम् ॥१॥**

शक्ति अक्षुण्ण गराउने, चेतना एवं स्नेह प्रदाता, उत्तम यज्ञका आधाररूप, ज्ञानप्रदाता, सनातन अग्निदेवलाई आह्वान गर्दै हामी उनको वन्दना गर्दछौं।

**स योजते अरुषा विश्वभोजसा स दुद्रवत्स्वाहुतः।**
**सुब्रह्मा यज्ञः सुशमी वसूनां देवं राधो जनानाम् ॥२॥**

अग्निदेव विश्वमा प्राणीको पोषण गर्नमा समर्थ तेज नियोजित गर्दछन्। उत्तम ज्ञानी, संयमी, पवित्र अग्निदेव श्रेष्ठ आहुतिले प्रदीप्त भएर गतिमान् हुन्छन्। विद्वान्हरूका श्रेष्ठ धन अग्निदेव नै हुन्।

**उदस्य शोचिरस्थादाजुह्वानस्य मीढ्हुषः।**
**उद्धूमासो अरुषासो दिविस्पृशः समग्निमिन्धते नरः ॥३॥**

हामी कामना पूर्ति गराउने अग्निलाई प्रदीप्त गर्दै छौं। हवि अर्पित गर्नाले अग्निदेवको तेज माथि उठ्दछ। तेजवान् र स्वर्गलोकसम्म छुन पुग्ने धुवाँ माथि उठ्दै छ।

**तं त्वा दूतं कृण्महे यशस्तमं देवाँ आ वीतये वह।**
**विश्वा सूनो सहसो मर्तभोजना रास्व तद्यत्त्वेमहे ॥४॥**

हे बलले उत्पन्न अग्निदेव ! तिमीलाई हामी आफ्नो दूतका रूपमा स्वीकार गर्दछौं। हे देव ! हवि ग्रहण गर्नका लागि समस्त देवताहरूको आह्वान गर। तिमीसित हामीले याचना गरेका बेला मानिसले उपभोग गर्न योग्य धन प्रदान गर।

**त्वमग्ने गृहपतिस्त्वं होता नो अध्वरे।**
**त्वं पोता विश्ववार प्रचेता यक्षि वेषि च वार्यम् ॥५॥**

हे अग्निदेव ! तिमी यस यज्ञका होता र गृहपतिजस्तै हौ। तिमी सबै जनाबाट स्वीकार गर्न योग्य छौ र सबैलाई पवित्र गराउँछौ। तिमी श्रेष्ठ ज्ञानी हौ र धन आदि प्राप्त गरेर वितरण गर्दछौं।

**कृधि रत्नं यजमानाय सुक्रतो त्वं हि रत्नधा असि।**
**आ न ऋते शिशीहि विश्वमृत्विजं सुशंसो यश्च दक्षते ॥६॥**

हे श्रेष्ठकर्मा अग्निदेव ! तिमी याजकलाई रत्न प्रदान गर। रत्नदाता भएर हाम्रा यज्ञमा सबै ऋत्विक्हरूलाई तेजस्वी बनाऊ। प्रशंसनीयलाई कुशलतापूर्वक अघि बढाऊ।

**त्वे अग्ने स्वाहुत प्रियासः सन्तु सूरयः।**
**यन्तारो ये मघवानो जनानामूर्वान्दयन्त गोनाम् ॥७॥**

हे अग्निदेव ! अग्निमा उत्तम कार्य गर्ने विद्वान्हरू, धनको लगानी गर्नेहरू, प्रजाको व्यवस्था बनाउनेहरू र गाई पालन गर्नेहरू तिम्रो कृपाका पात्र बनून्।

**येषामिळा घृतहस्ता दुरोण आँ अपि प्राता निषीदति।**
**ताँस्त्रायस्व सहस्य द्रुहो निदो यच्छा नः शर्म दीर्घश्रुत् ॥८॥**

हे बलवान् अग्निदेव ! जुन घरमा यज्ञका निम्ति घिउ र हविष्पात्र भरिएका पात्र लिएर देवीजस्ता स्त्री निवास गर्छन्, तिमी निन्दक र शत्रुबाट तिनीहरूको रक्षा गर। हामी तिम्रो स्तुति गर्दछौं।

**स मन्द्रया च जिह्वया वह्निरासा विदुष्टरः।**
**अग्ने रयिं मघवद्भ्यो न आ वह हव्यदातिं च सूदय ॥९॥**

हे अग्निदेव ! हविरूपी द्रव्य प्रेषित गर्ने कर्ममा हामी सबैलाई प्रेरित गर। जिब्राले आनन्ददायी हवि वहन गर्ने हे हविवाहक देवता ! हामीलाई तिमी धन प्रदान गर।

**ये राधांसि ददत्यश्व्या मघा कामेन श्रवसो महः।**
**ताँ अंहसः पिपृहि पर्तृभिष्ट्वं शतं पूर्भिर्यविष्ठ्य ॥१०॥**

हे अत्यन्त तरुण अग्निदेव ! जुन मानिस यश प्राप्तिका कामनाले साधना गर्दछन् र अश्वजस्तै गतिशील हवि अर्पित गर्दछन्, उनीहरूलाई पापबाट बचाऊ। आफ्ना संरक्षण साधनले सयौं किसिमका किल्लामा उनीहरूलाई सुरक्षित गर।

देवो वो द्रविणोदाः पूर्णां विवष्ट्यासिचम्।
उद्वा सिञ्चध्वमुप वा पृणध्वमादिद्वो देव ओहते ॥११॥

हे याजकहरू हो ! तिमीहरूबाट धन प्रदाता अग्निदेवले भाव र पात्रमा पूर्ण आहुतिको अपेक्षा गर्दछन्। तिमीहरू उनलाई पूर्ण सिञ्चित गर। त्यसो भएपछि ती देवताले तिम्रा कार्यलाई वहन गर्दछन्।

तं होतारमध्वरस्य प्रचेतसं वह्निं देवा अकृण्वत।
दधाति रत्नं विधते सुवीर्यमग्निर्जनाय दाशुषे ॥१२॥

देवताहरूले श्रेष्ठ ज्ञानसम्पन्न अग्निदेवलाई आफ्नो सहायक बनाएका छन्। उनी हव्यवाहक पनि हुन्। उनले यज्ञ गर्ने र दान दिनेहरूलाई पराक्रम आदि श्रेष्ठतम विभूति प्रदान गर्दछन्।

[सूक्त - १७]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- अग्नि। छन्द- द्विपदा त्रिष्टुप्।

अग्ने भव सुषमिधा समिद्ध उत बर्हिरुर्विया वि स्तृणीताम् ॥१॥

हे अग्निदेव ! तिमी उत्तम किसिमले प्रज्वलित होऊ। याजकहरू असल किसिमले कुशका आसन बिछ्याऊन्।

उत द्वार उशतीर्वि श्रयन्तामुत देवाँ उशत आ वहेह ॥२॥

हे अग्निदेव ! देवत्व कामना गर्नेलाई तिमी आश्रय प्रदान गर र यज्ञको अभिलाषा गर्ने देवतालाई यस यज्ञमा आह्वान गर।

अग्ने वीहि हविषा यक्षि देवान्त्स्वध्वरा कृणुहि जातवेदः ॥३॥

हे सर्वज्ञानसम्पन्न अग्निदेव ! तिमी देवताका नजिक गएर हविले यजन गर। उनलाई सुन्दर यज्ञकर्ता बनाऊ।

स्वध्वरा करति जातवेदा यक्षद्देवाँ अमृतान्पिप्रयच्च ॥४॥

हे ज्ञानसम्पन्न अग्निदेव ! तिमी अमर देवताहरूको यजन गर र स्तोत्रले प्रसन्न गराऊ।

वंस्व विश्वा वार्याणि प्रचेतः सत्या भवन्त्वाशिषो नो अद्य ॥५॥

हे ज्ञानवान् अग्निदेव ! हामीलाई सबै किसिमले उत्तम धन प्रदान गर। आज हामीलाई प्रदान गरेको आशीर्वाद सत्य सिद्ध होस्।

त्वामु ते दधिरे हव्यवाहं देवासो अग्न ऊर्ज आ नपातम् ॥६॥

हे बलका पुत्र अग्निदेव ! तिमीलाई देवताहरूले हविवाहकका रूपमा स्वीकार गर्छन्।

ते ते देवाय दाशतः स्याम महो नो रत्ना वि दध इयानः ॥७॥

हे अग्निदेव ! तिमी प्रकाशस्वरूप, महान् एवं उपास्य हौ। हामी तिम्रा लागि आहुति अर्पित गर्दछौं। हामीलाई तिमी रत्न प्रदान गर।

[सूक्त - १८]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता- इन्द्र सुदास पैजवन। छन्द- त्रिष्टुप्।

त्वे ह यत्पितरश्चिन्न इन्द्र विश्वा वामा जरितारो असन्वन्।
त्वे गावः सुदुघास्त्वे ह्यश्वास्त्वं वसु देवयते वनिष्ठः ॥१॥

हे इन्द्रदेव ! प्राचीन कालमा हाम्रा पूर्वजहरू स्तुतिद्वारा तिमीलाई प्रसन्न गरेर धन प्राप्त गर्दथे। तिमी उत्तम घोडा र दुधालु गाईका स्वामी हौ। तिमी देवत्व प्राप्तिको कामना भएका हामी सबैलाई प्रचुर धन प्रदान गर्दछौ।

राजेव हि जनिभिः क्षेष्येवाव द्युभिरभि विदुष्कविः सन्।
पिशा गिरो मघवन् गोभिरश्वैस्त्वायतः शिशीहि राये अस्मान् ॥२॥

हे इन्द्रदेव ! रानीहरूका माझमा राजा सुशोभित भएझैं तिमी द्युलोकमा सुशोभित छौ। ज्ञानी र कवि भएर स्तुति गर्नेहरूलाई रूप प्रदान गर र अश्वद्वारा उनीहरूको रक्षा गर। हामीलाई संस्कारवान् बनाऊ र त्यसले धन आओस् भन्ने तिमीसित प्रार्थना गर्दछौं।

इमा उ त्वा पस्पृधानासो अत्र मन्द्रा गिरो देवयन्तीरुप स्थुः।
अर्वाची ते पथ्या राय एतु स्याम ते सुमताविन्द्र शर्मन् ॥३॥

हे इन्द्रदेव ! यस यज्ञमा हामी स्तोताहरू स्तोत्रले तिम्रो यशोगान गर्दछौं। होड गर्ने, हर्षित गर्ने र देवत्वको कामना गर्ने हाम्रो वाणी तिमीकहाँ पुग्दछ। तिमीबाट प्रेषित सद्बुद्धिले हामी सुखका साथै धन पनि प्राप्त गरौं।

धेनुं न त्वा सूयवसे दुदुक्षन्नुप ब्रह्माणि ससृजे वसिष्ठः।
त्वामिन्मे गोपतिं विश्व आहा न इन्द्रः सुमतिं गन्त्वच्छ ॥४॥

तिमीलाई दोहन गर्नका निम्ति वसिष्ठले बाछारूपी स्तोत्रको रचना गर्दछन्। राम्रो घाँस पाइने गोठका गोठालाले बाछाको सहायताद्वारा गाई दुहेझैं तिमीलाई उनी दुहुन्छन्। विश्वमा तिमी नै गाईका पतिको रूपमा प्रसिद्ध छौ। हे इन्द्रदेव ! हामी वसिष्ठ गोत्रीय होताहरूको स्तुति सुनेर हाम्रा नजिकै आऊ।

अर्णांसि चित्पप्रथाना सुदास इन्द्रो गाधान्यकृणोत्सुपारा।
शर्धन्तं शिम्युमुचथस्य नव्यः शापं सिन्धूनामकृणोदशस्तीः ॥५॥

स्तुतिबाट प्रसन्न भएर इन्द्रदेवले सुदास राजालाई उर्लिएका तरङ्ग भएको, कठिन, पार पाइनसक्नुको परुष्णी नदी सजिलैसित पार गराए। स्तुति गर्नेहरूलाई उनले तरङ्गयुक्त नदीका शापबाट मुक्त गराए।

पुरोळा इत्तुर्वशो यक्षुरासीद्राये मत्स्यासो निशिता अपीव।
श्रुष्टिं चक्रुर्भृगवो द्रुह्यवश्च सखा सखायमतरद्विषूचोः ॥६॥

तुर्वशले यज्ञबाट प्रगति गर्न खोजेका थिए। उनी मत्स्यहरूको जस्तै धनऐश्वर्यका लागि प्रयत्नरत थिए। भृगु र द्रुह धनका लागि होडबाजी गर्दै थिए। यस होडमा मित्ररूपी इन्द्रले तुर्वश आदिलाई नष्ट गराए। मित्र सुदासलाई तारिदिए।

आ पक्थासो भलानसो भनन्तालिनासो विषाणिनः शिवासः।
आ योऽनयत्सधमा आर्यस्य गव्या तृत्सुभ्यो अजगन्युधा नॄन् ॥७॥

हविष्यान्न पकाउन सिपालु, तपस्यामा लागेका, भद्रमुख, विषाण धारक स्तोताहरू सबैको कल्याण गर्ने इच्छाले इन्द्रदेवको स्तुति गर्दछन्। इन्द्रदेवले सँगै रहने गरेका असल पुरुषका गाई फिर्ता ल्याउन युद्ध गरे र गाई चोर्नेहरूलाई नाश गरेका थिए।

दुराध्योऽ अदितिं स्रेवयन्तोऽचेतसो वि जगृभ्रे परुष्णीम्।
मह्नाविव्यक् पृथिवीं पत्यमानः पशुष्कविरशयच्चायमानः ॥८॥

दुष्ट बुद्धि भएका मूर्ख शत्रुले परुष्णी नदीका किनारा भत्काए। इन्द्रदेवका कृपाले सुदासले पालेको पशुजस्ता चयमानका पुत्रलाई सजिलै धराशायी गराए। त्यसपछि सुदासको यश विश्वव्यापी भयो।

ईयुरर्थं न न्यर्थं परुष्णीमाशुश्चनेदभिपित्वं जगाम।
सुदास इन्द्रः सुतुकाँ अमित्रानरन्धयन्मानुषे वध्रिवाचः ॥९॥

इन्द्रदेवले परुष्णीका किनारा बनाउन लगाएर जलप्रवाह व्यवस्थित गराए। सुदासका घोडा पनि आफ्ना गन्तव्यमा गए। इन्द्रदेवले सुदासका ती शत्रुलाई मारिदिए, जो दुर्मुख र धेरै सन्तानले युक्त थिए।

ईयुर्गावो न यवसादगोपा यथाकृतमभि मित्रं चितासः।
पृश्निगावः पृश्निनिप्रेषितासः श्रुष्टिं चक्रुर्नियुतो रन्तयश्च ॥१०॥

गोठालोबिनाका गाई चरनतिर गएझैं माताद्वारा प्रेरित, चैतन्य, विभिन्न वर्णका गाईहरू पहिले नै निश्चित गरिएअनुसार आफ्ना मित्र इन्द्रदेवको सहायताका लागि जान्छन्। मरुत्‌हरूका अश्व पनि फुर्तिलो किसिमले गतिमान हुन्छन्।

एकं च यो विंशतिं च श्रवस्या वैकर्णयोर्जनान्राजा न्यस्तः।
दस्मो न सद्मन्नि शिशाति बर्हिः शूरः सर्गमकृणोदिन्द्र एषाम् ॥११॥

वीर इन्द्रदेवले सुदासको सहायताका लागि मरुत्‌हरूलाई उत्पन्न गराए। युवकले कुश काटेझैं मरुत्‌हरू सङ्ग्राममा शत्रु काट्दछन्। इन्द्रदेवले सुदासको रक्षाका लागि विकर्ण देशका कुरो नसुन्ने एक्काईस अटेरीहरूलाई मारिदिए।

अध श्रुतं कवषं वृद्धमप्स्वनु द्रुह्युं नि वृणग्वज्रबाहुः।
वृणाना अत्र सख्याय सख्यं त्वायन्तो ये अमदन्ननु त्वा ॥१२॥

त्यसपछि हातमा वज्र लिएका इन्द्रदेवले श्रुत, कवष र वृद्ध द्रोहीलाई जलमा डुबाएर मारिदिए। हे इन्द्रदेव ! त्यस वेला जसले तिम्रो अनुकूल आनन्ददायी काम गरे, तिनीहरू तिम्रा मित्र कहलाए।

वि सद्यो विश्वा दृंहितान्येषमिन्द्रः पुरः सहसा सप्त दर्दः।
व्यानवस्य तृत्सवे गयं भाग्जेष्म पूरुं विदथे मृध्रवाचम् ॥१३॥

इन्द्रदेवले आफ्नै सामर्थ्यले शत्रुको सैन्यशक्ति र बलिया किल्ला ध्वस्त गराए। अनुका पुत्र गयलाई तृत्सुका निमित्त प्रदान गरे। हे इन्द्रदेव ! हामीमाथि यस्तो कृपा गर, जसले कटुभाषीमाथि हामी विजय प्राप्त गर्न सकौँ।

नि गव्यवोऽनवो द्रुह्यवश्च षष्टिः शता सुषुपुः षट् सहस्रा।
षष्टिर्वीरासो अधि षड् दुवोयु विश्वेदिन्द्रस्य वीर्या कृतानि ॥१४॥

हे इन्द्रदेव ! अनु र द्रुहका छैसट्ठी हजार छैसट्ठी वीरलाई तिमीले सुदासको हितका लागि मारिदियौ। यी सबै कार्य तिम्रो पराक्रमका द्योतक हुन्।

इन्द्रेणैते तृत्सवो वेविषाणा आपो न सृष्टा अधवन्त नीचीः।
दुर्मित्रासः प्रकलविन् मिमाना जहुर्विश्वानि भोजना सुदासे ॥१५॥

सङ्ग्रामभूमिमा अज्ञानी, दुष्ट सहयोगी लिएका तृत्सु इन्द्रका सामु टिक्न सकेनन् र ओरालो लागेको पानीझैँ तीव्र गतिले भागे। उनले छोडेको भोग्य सामग्री सुदासलाई प्राप्त भयो।

अर्धं वीरस्य शृतपामनिन्द्रं परा शर्धन्तं नुनुदे अभि क्षाम्।
इन्द्रो मन्युं मन्युम्यो मिमाय भेजे पथो वर्तनिं पत्यमानः ॥१६॥

विनाशक वीर, दुष्ट, हविरूपी अन्न भक्षक, विनाशक शत्रु र शत्रुको क्रोध इन्द्रदेवले धराशायी गराए। भगुवा शत्रुलाई कुलेलम ठोक्नका लागि विवश गराए।

आध्रेण चित्तद्वेकं चकार सिंह्यं चित्पेत्वेना जघान।
अव स्रक्तीर्वेश्यावृश्चदिन्द्रः प्रायच्छद्विश्वा भोजना सुदासे ॥१७॥

इन्द्रदेवले सुदासद्वारा गराएका कार्य दरिद्रले ठूलो दान गरेको वा बोकाले सिंहलाई मारेको वा सियोले रुख ढालेकोजस्तै चमत्कारपूर्ण भए। यसैले इन्द्रदेवले सुदासलाई नै समस्त किसिमले भोग्य पदार्थ प्रदान गरे।

शश्वन्तो हि शत्रवो रारधुष्टे भेदस्य चिच्छर्धतो विन्द रन्धिम्।
मर्ताँ एनः स्तुवतो यः कृणोति तिग्मं तस्मिन्नि जहि वज्रमिन्द्र ॥१८॥

हे इन्द्रदेव ! समस्त वीर शत्रु तिम्रा वशमा परेका छन्। हे देव ! सुकर्म गर्नेहरूको अहित गर्ने भेदलाई वशमा पारेर त्यसलाई वज्र प्रहार गर।

आवदिन्द्रं यमुना तृत्सवश्च प्रात्र भेदं सर्वताता मुषायत्।
अजासश्च शिग्रवो यक्षवश्च बलिं शीर्षाणि जभ्रुरश्व्यानि ॥१९॥

सर्वव्यापी युद्धमा इन्द्रदेवले भेद आदि शत्रु संहार गरेका थिए। यमुना र तृत्सुले इन्द्रदेवलाई सन्तुष्ट गरेका थिए। अजा, शिग्रु र यक्षुले इन्द्रदेवका निम्ति अनेकौँ अश्व उपहार दिए।

न त इन्द्र सुमतयो न रायः सञ्चक्षे पूर्वा उषसो न नूत्नाः।
देवकं चिन्मान्यमानं जघन्थाव त्मना बृहतः शम्बरं भेत् ॥२०॥

हे इन्द्रदेव ! तिमीले पहिले कृपा गरेर जुन धन आदि प्रदान गर्‍यौ, ती सबै उषाजस्तै अवर्णनीय छन्। तिम्रा नयाँ उपकारको पनि वर्णन गरिसक्नु छैन। तिमीले मान्यमानका पुत्र देवकको संहार गर्‍यौ र ठूलो ढुङ्गाले किचेर शम्बर असुरलाई आफैँ वध गर्‍यौ।

प्र ये गृहादममदुस्त्वाया पराशरः शतयातुर्वसिष्ठः।
न ते भोजस्य सख्यं मृषन्ताधा सूरिभ्यः सुदिना व्युच्छान् ॥२१॥

हे इन्द्रदेव ! जसलाई असुरले मार्न चाहन्थे, त्यस्ता पराशर, वसिष्ठ आदि ऋषिहरूले भक्तिपूर्वक तिम्रो स्तुति गरेका छन्। तिनीहरूका तिमी पालक हौ। त्यसो भएकैले उनीहरूले तिम्रो मित्रता बिर्सेनन्। तिम्रा कृपाले यी ऋषिहरूले असल दिन पाऊन्।

द्वे नप्तुर्देववतः शते गोर्द्वा रथा वधूमन्ता सुदासः।
अर्हन्नग्ने पैजवनस्य दानं होतेव सद्म पर्येमि रेभन् ॥२२॥

हे अग्निदेव ! देववान्का नाति र पिजवनका पुत्र राजा सुदासले दुई सय गाई र भारी ओसार्ने दुई वटा रथ दानमा दिए। हामी यस दानको प्रशंसा गर्दै होताझैं यज्ञगृहमा यज्ञ सम्पन्न गर्नका लागि जान्छौं।

चत्वारो मा पैजवनस्य दानाः स्मद्दिष्टयः कृशनिनो निरेके।
ऋज्रासो मा पृथिविष्ठाः सुदासस्तोकं तोकाय श्रवसे वहन्ति ॥२३॥

पिजवनका पुत्र सुदास राजाले सुनका गहनाले सजिएको, कठिन मार्गमा सजिलैसित जान सक्ने र पुत्रजस्तै गरेर पालेका चार सय अश्व श्रद्धापूर्वक दान दिए। पृथ्वीमा प्रसिद्ध ती घोडाहरू वसिष्ठ ऋषिका पुत्रजस्तै हुनाले पुत्र र यश प्राप्त गर्नका लागि लिएर जान्छन्।

यस्य श्रवो रोदसी अन्तरुर्वी शीर्ष्णेशीर्ष्णे विबभाजा विभक्ता।
सप्तेदिन्द्रं न स्रवतो गृणन्ति नि युध्यामधिमशिशादभीके ॥२४॥

दान दाताका रूपमा राजा सुदासको यश पृथ्वी र स्वर्गलोकसम्म फैलियो। सातै लोकले यस्ता दानीको प्रशंसा इन्द्रदेवको जस्तै गर्छन्। युध्यामधि नामको यिनको शत्रु नदीहरूद्वारा मारियो।

इमं नरो मरुतः सश्चतानु दिवोदासं न पितरं सुदासः।
अविष्टना पैजवनस्य केतं दूणाशं क्षत्रमजरं दुवोयु ॥२५॥

हे नेतृत्वको क्षमताले सम्पन्न मरुत्हरू हो ! यी सुदास राजा हुन्। यिनका पिता पिजवन हुन्। दिवोदासको जस्तै सुदासका निवासको पनि रक्षा गर। यिनको क्षात्रबल बढोस्, कहिल्यै नघटोस्।

[सूक्त - १९]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

यस्तिग्मशृङ्गो वृषभो न भीम एकः कृष्टीश्च्यावयति प्र विश्वाः।
यः शश्वतो अदाशुषो गयस्य प्रयन्तासि सुष्वितराय वेदः ॥१॥

जुन इन्द्रदेव तिखा सिङ भएको साँढेजस्तै भयङ्कर छन्, उनले एक्लै नै समस्त शत्रुलाई आफ्ना स्थानबाट च्युत गराउँछन्। जसले यजन गर्दैनन्, त्यस्ता मानिसहरूको निवास खोस्ने हे इन्द्रदेव ! हामी याजकहरूलाई तिमी धनऐश्वर्य प्रदान गर।

त्वं ह त्यदिन्द्र कुत्समावः शुश्रूषमाणस्तन्वा समर्ये।
दासं यच्छुष्णं कुयवं न्यस्मा अरन्धय आर्जुनेयाय शिक्षन् ॥२॥

हे इन्द्रदेव ! सङ्ग्राममा कुत्सको सुरक्षा र सुश्रुषा तिमीले स्वयं गरेका थियौ। त्यस बेला अर्जुनीका पुत्र कुत्सलाई धन दियौ अनि शुष्ण र कुयव नामका दास संहार गर्‍यौ।

त्वं धृष्णो धृषता वीतहव्यं प्रावो विश्वाभिरूतिभिः सुदासम्।
प्र पौरुकुत्सिं त्रसदस्युमावः क्षेत्रसाता वृत्रहत्येषु पूरुम् ॥३॥

हे अदम्य इन्द्रदेव ! तिमी हवि पदार्थ अर्पित गर्ने राजा सुदासको सुरक्षा आफ्ना वज्रका रक्षण शक्तिले गर्दछौ। शत्रु संहार गर्ने र भूमि बाँड्ने बेलामा तिमीले पुरुकुत्सका पुत्र त्रसदस्यु र पूरुको संरक्षण गरेका थियौ।

त्वं नृभिर्नृमणो देववीतौ भूरीणि वृत्रा हर्यश्व हंसि।
त्वं नि दस्युं चुमुरिं धुनिं चास्वापयो दभीतये सुहन्तु ॥४॥

मानिसका हितैषि मन भएका हे इन्द्रदेव ! तिमीले युद्धभूमिमा मरुत्हरूका सहायताले उनका शत्रुको विनाश गरेका थियौ। हे हरियो अश्व भएका इन्द्रदेव ! तिमीले नै दभीतिको सुरक्षाका लागि चुमुरी र धुनी नामका दस्यु मारेका थियौ।

तव च्यौत्नानि वज्रहस्त तानि नव यत्पुरो नवतिं च सद्यः।
निवेशने शततमाविवेषीरहञ्च वृत्रं नमुचिमुताहन् ॥५॥

हे वज्रधारी इन्द्रदेव ! तिमीले आफ्ना प्रसिद्ध बलद्वारा शत्रुका उनान्सय नगर अति कम समयमा ध्वस्त पारिदियौ। आफ्नो निवासका लागि सयौं नगरमा प्रवेश गरेर तिमीले वृत्रासुर र नमुचीलाई मारिदियौ।

सना ता त इन्द्र भोजनानि रातहव्याय दाशुषे सुदासे।
वृष्णे ते हरी वृषणा युनज्मि व्यन्तु ब्रह्माणि पुरुशाक वाजम्॥६॥

हे इन्द्रदेव ! तिमीले हविदाता राजा सुदासका लागि सधैँ रहिरहने धनसम्पदा प्रदान गऱ्यौ। हे कामना पूर्ति गर्ने बहुकर्मा इन्द्रदेव ! हामी तिम्रा लागि दुई वटा बलशाली अश्व रथमा जोड्दछौँ। तिमी बलशाली छौ र तिमीकहाँ हाम्रो स्तोत्र पुगोस्।

मा ते अस्यां सहसावन्परिष्टावघाय भूम हरिवः परादै।
त्रायस्व नोऽवृकेभिर्वरूथैस्तव प्रियासः सूरिषु स्याम॥७॥

हे इन्द्रदेव ! तिमी बलवान् अश्वका स्वामी हौ। तिम्रा यज्ञमा हामी अर्काको सहायता पाउने पाप नगरौँ। तिमी आफ्ना रक्षण साधनले हाम्रो रक्षा गर। स्तुति गर्ने हामी तिम्रा विशेष प्रिय पात्र बनौँ।

प्रियास इत्ते मघवन्नभिष्टौ नरो मदेम शरणे सखायः।
नि तुर्वशं नि याद्वं शिशीह्यतिथिग्वाय शंस्यं करिष्यन्॥८॥

हे धनका अधिपति इन्द्रदेव ! तिम्रो स्तुति गर्ने हामी आपसमा प्रेमपूर्वक मित्रभावले घरमा प्रसन्न भएर रहौँ। तिमी अतिथिसत्कारमा निपुण सुदासलाई सुख प्रदान गर्दै तुर्वश र यदुवंशीलाई परास्त गर।

सद्यश्चिन्नु ते मघवन्नभिष्टौ नरः शंसन्त्युक्थशास उक्था।
ये ते हवेभिर्वि पणींरदाशन्नस्मान्वृणीष्व युज्याय तस्मै॥९॥

हे धनवान् इन्द्रदेव ! तिम्रा यज्ञमा हामी स्तोताहरू स्तोत्र उच्चारण गर्दछौँ। तिमीलाई हवि अर्पित गरेर उक्थ उच्चारण गर्दै लोभीलाई पनि धन दान गर्ने प्रेरणा दियौ। हामी सबैलाई तिमी मित्रका रूपमा स्वीकार गर।

एते स्तोमा नरां नृतम तुभ्यमस्मद्र्यञ्चो ददतो मघानि।
तेषामिन्द्र वृत्रहत्ये शिवो भूः सखा च शूरोऽविता च नृणाम्॥१०॥

हे नेतृत्व गर्नमा श्रेष्ठ इन्द्रदेव ! स्तोत्र र हविले यजन गर्नेहरूले तिमीलाई हामी सबैको हितैषि बनाइदिएका छन्। तिमी युद्धका समयमा यिनै स्तोताको रक्षा गर।

नू इन्द्र शूर स्तवमान ऊती ब्रह्मजूतस्तन्वा वावृधस्व।
उप नो वाजान्मिमीह्युप स्तीन्यूयं पात स्वस्तिभिः सदा नः॥११॥

हे शूरवीर इन्द्रदेव ! स्तुत्य र ज्ञानले प्रेरित भएर तिम्रो शरीर र रक्षण शक्ति वृद्धि होस्। हामी सबैलाई आफ्ना कल्याणकारी शक्तिले सुरक्षित गर्दै अन्न र आवास प्रदान गर।

[सूक्त - २०]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

उग्रो जज्ञे वीर्याय स्वधावाञ्चक्रिरपो नर्यो यत्करिष्यन्।
जग्मिर्युवा नृषदनमवोभिस्त्राता न इन्द्र एनसो महश्चित्॥१॥

धारणशक्तिले युक्त पराक्रमी इन्द्रदेव वीरतापूर्ण कार्य गर्नका लागि उन्नत भएका हुन्। उनले मानिसको हितका लागि उचित ठानेको काम अवश्य पूर्ण गर्दछन्। यज्ञशालातिर जाने वरुण र संरक्षक इन्द्रदेवले महापातकबाट हाम्रो रक्षा गरुन्।

हन्ता वृत्रमिन्द्रः शूशुवानः प्रावीन्नु वीरो जरितारमूती।
कर्ता सुदासे अह वा उ लोकं दाता वसु मुहुरा दाशुषे भूत्॥२॥

वृद्धि प्राप्त गरेपछि इन्द्रदेव वृत्रलाई संहार गर्दछन्। स्तोतालाई आश्रय प्रदान गर्दै उनीहरूको रक्षा गर्दछन्। उनी सुदास राजाका लागि क्षेत्र निर्माण गर्दछन् र याजकलाई बारम्बार धन प्रदान गर्दछन्।

युध्मो अनर्वा खजकृत्समद्वा शूरः सत्राषाड्जनुषेमषाढः।
व्यास इन्द्रः पृतनाः स्वोजा अधा विश्वं शत्रूयन्तं जघान॥३॥

युद्धका कलामा कुशल, युद्धमा लागि पर्ने, योद्धा, सङ्ग्रामका लागि सधैँ तत्पर, शूरवीर र सहज स्वभावले अनेकौँ शत्रु जित्ने, स्वयं कहिल्यै नहार्ने, इन्द्रदेवले शत्रुको सैन्यदल अस्तव्यस्त गराएर शत्रुको वध गरे।

उभे चिदिन्द्र रोदसी महित्वा पप्राथ तविषीभिस्तुविष्मः।
नि वज्रमिन्द्रो हरिवान्मिमिक्षन्त्समन्धसा मदेषु वा उवोच ॥४॥

हे परम ऐश्वर्यशाली इन्द्रदेव ! तिमी आफ्नो बल र महिमाले द्यावापृथिवी दुवै लोकलाई परिपूरित गर्दछौ। अश्वमा चढेका इन्द्रदेव शत्रुमाथि वज्रले आघात गर्छन्। इन्द्रदेवलाई यज्ञमा सोमरसले सेवा गर्नुपर्छ।

वृषा जजान वृषणं रणाय तमु चिन्नारी नर्यं ससूव।
प्र यः सेनानीरध नृभ्यो अस्तिनः सत्वा गवेषणः स धृष्णुः ॥५॥

बलशालिनी माता र बलवान् पिताले मानिसका हितमा युद्ध गर्नका लागि पुत्र इन्द्रलाई उत्पन्न गरे। उनी मानिसका हितकारी सेनानायक र प्रभावशाली स्वामी हुन्। उनै शत्रुनाशक इन्द्रदेव गाईको खोजी गर्ने र शत्रुलाई दमन गर्छन्।

नू चित्स भ्रेषते जनो न रेषन्मनो यो अस्य घोरमाविवासात्।
यज्ञैर्य इन्द्रे दधते दुवांसि क्षयत्स राय ऋतपा ऋतेजाः ॥६॥

यी शूरवीर इन्द्रदेवको मन यज्ञले सेवा गरेर प्रसन्न गराउने मानिसहरू पतित र क्षीण हुँदैनन्। यज्ञबाट उत्पन्न र यज्ञका रक्षक इन्द्रदेव स्तोतालाई धन प्रदान गर्दछन्।

यदिन्द्र पूर्वो अपराय शिक्षन्नयज्ज्यायान् कनीयसो देष्णम्।
अमृत इत्पर्यासीत दूरमा चित्र चित्र्यं भरा रयिं नः ॥७॥

हे विचित्र इन्द्रदेव ! पुर्खाले आफ्ना वंशजलाई दिने वा दूर देशमा जाँदा पाइने अथवा ठूलाबाट सानालाई प्राप्त हुने यी तीनै खालका अक्षय धन हामीलाई तिमी देऊ।

यस्त इन्द्र प्रियो जनो ददाशदसन्निरेके अद्रिवः सखा ते।
वयं ते अस्यां सुमतौ चनिष्ठाः स्याम वरूथे अघ्नतो नृपीतौ ॥८॥

हे वज्रधारी इन्द्रदेव ! तिम्रा लागि हवि प्रदान गर्ने प्रिय मित्रलाई तिमीले दिएको धन प्राप्त होस्। तिम्रा कृपाले हामी धनवान्, अन्नवान् र अहिंसक बनौं। मानिसले निवास गर्न योग्य सुरक्षित घरमा हामी रहौं।

एष स्तोमो अचिक्रदद्वृषा त उत स्तामुर्मघवन्नक्रपिष्ट।
रायस्कामो जरितारं त आगन्त्वमङ्ग शक्र वस्व आ शको नः ॥९॥

हे धनवान् इन्द्रदेव ! तिम्रो बलवर्द्धक यो सोम, शब्द गर्दछ र स्तोता स्तुति गर्दछन्। हे इन्द्रदेव ! हामी तिम्रा स्तोता हौं। हामीलाई धनको इच्छा छ, त्यसैले धनसहितको निवास प्रदान गर।

स न इन्द्र त्वयताया इषे धास्त्मना च ये मघवानो जुनन्ति।
वस्वी षु ते जरित्रे अस्तु शक्तिर्यूयं पात स्वस्तिभिः सदा नः ॥१०॥

हे इन्द्रदेव ! हामीलाई स्वीकार गरेर सुरक्षित राख। तिमीले प्रदान गरेको अन्न उपभोग गर्ने शक्ति हामीमा होस्। स्वेच्छापूर्वक हवि प्रदान गर्ने धनवान्लाई सुरक्षित गर। स्तोताहरूमा स्तुति गर्ने शक्ति होस्। कल्याणकारी रक्षण साधनले हाम्रो सुरक्षा गर।

[सूक्त - २१]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

असावि देवं गोऋजीकमन्धो न्यस्मिन्निन्द्रो जनुषेमुवोच।
बोधामसि त्वा हर्यश्व यज्ञैर्बोधा नः स्तोममन्धसो मदेषु ॥१॥

दिव्य सोमरस पेलेर गाईका दुधमा मिसाएका छौं। इन्द्रदेव जन्मैदेखि यो रुचाउँछन्। हे हरि नामका अश्व भएका इन्द्रदेव ! हामी यज्ञमा तिमीलाई जागृत गराउँछौं। सोमले आनन्दित भएर हाम्रा स्तोत्रमा तिमी ध्यान देऊ।

प्र यन्ति यज्ञं विपयन्ति बर्हिः सोममादो विदथे दुध्रवाचः।
न्यु भ्रियन्ते यशसो गृभादा दूरउपब्दो वृषणो नृषाचः ॥२॥

याजकहरू यज्ञशालामा कुशको आसन ओछ्याउँछन् र ढुङ्गामा सोम कुट्दछन्। सोम कुट्नाले ढुङ्गा ठोकिँदा आएको कर्कश ध्वनि टाढै सुनिन्छ। ऋत्विक्‌हरूले बलवर्द्धक सोम कुट्ने ढुङ्गा घरबाट ल्याएका थिए।

त्वमिन्द्र स्रवितवा अपस्कः परिष्ठिता अहिना शूर पूर्वीः।
त्वद्वावक्रे रथ्योऽ न धेना रेजन्ते विश्वा कृत्रिमाणि भीषा ॥३॥

हे शूरवीर इन्द्रदेव ! वृत्रबाट आक्रान्त भएर रोकिएका पानीका धेरै वटा प्रवाह तिमीले प्रवाहित गरायौ। तिमीले नै नदीलाई रथमा चढेको वीर हिंडेझैं ब्यग्न दिएका हौ। तिम्रा डरले भुवनहरू कम्पित भए।

भीमो विवेषायुधेभिरेषामपांसि विश्वा नर्याणि विद्वान्।
इन्द्रः पुरो जर्हृषाणो वि दूधोद्वि वज्रहस्तो महिना जघान ॥४॥

इन्द्रदेव मानव हितकारी र समस्त कार्यकुशल छन्। आयुध धारण गरेर भयङ्करजस्ता लाग्ने इन्द्रदेव हर्षित भएपछि वज्र धारण गरेर शत्रुका सेनाभित्र पसेपछि शत्रुलाई भयभीत गराउँदै तिनीहरूको वध गर्दछन्।

न यातव इन्द्र जुजुवुर्नो न वन्दना शविष्ठ वेद्याभिः।
स शर्धदर्यो विषुणस्य जन्तोर्मा शिश्नदेवा अपि गुर्ऋतं नः ॥५॥

हे इन्द्रदेव ! असुरले हामीमाथि घात गर्न नसकून्। बलशाली असुरले हाम्रो वन्दना र अध्ययनमा पनि बाधा नपारुन्। हे आर्य ! विषमतालाई नियन्त्रणमा राख। हिंसक स्वभाव र कामुक वृत्ति भएकाहरू हाम्रा यज्ञका नजिकै आउन नपाऊन्।

अभि क्रत्वेन्द्र भूरध ज्मन्न ते विव्यङ्महिमानं रजांसि।
स्वेना हि वृत्रं शवसा जघन्थ न शत्रुरन्तं विविदद्युधा ते ॥६॥

हे इन्द्रदेव ! तिमी आफ्ना पुरुषार्थले भूलोकका सर्व शत्रु प्राणी परास्त गर्दछौ। तिम्रो सबै महिमा लोकले जानेको छैन। तिमी आफ्ना बलले वृत्र नामको शत्रु संहार गर्दछौ। युद्धमा शत्रुले तिम्रो पार पाउन सक्दैनन्।

देवाश्चित्ते असुर्याय पूर्वेऽनु क्षत्राय ममिरे सहांसि।
इन्द्रो मघानि दयते विषह्येन्द्रं वाजस्य जोहुवन्त सातौ ॥७॥

हे इन्द्रदेव ! पहिले देवताहरूले तिम्रो बल र शत्रु मार्ने शक्तिको तुलना गर्दा तिमीलाई कमजोर ठानेका थिए। तिमी शत्रु जितेर धनजति आफ्ना भक्तलाई प्रदान गर्दछौ। धनको इच्छाले याजकहरू इन्द्रदेवको स्तुति गर्दछन्।

कीरिश्चिद्धि त्वामवसे जुहावेशानमिन्द्र सौभगस्य भूरेः।
अवो बभूथ शतमूते अस्मे अभिक्षत्तुस्त्वावतो वरूता ॥८॥

हे शासनकर्ता इन्द्रदेव ! स्तोताहरू तिम्रो स्तुति गर्दै आफ्ना सुरक्षाको कामना गर्दछन्। तिमी सयौं रक्षण साधनले हाम्रा धनको सुरक्षा गर। तिमीसित जसले स्पर्धा गर्दछन्, त्यस्ता शत्रुको नाश गर।

सखायस्त इन्द्र विश्वह स्याम नमोवृधासो महिना तरुत्र।
वन्वन्तु स्मा तेऽवसा समीकेऽभीतिमर्यो वनुषां शवांसि ॥९॥

हे इन्द्रदेव ! हामी सबै तिम्रो यश बढाउनका लागि सधैंभरि सखाका रूपमा रहौं। हे महिमावान् ! हे तारक इन्द्रदेव ! स्तोताहरू तिमीबाट सुरक्षित होऊन् र आक्रमण गर्न आउने शत्रुलाई जितून्।

स न इन्द्र त्वयताया इषे धास्त्मना च ये मघवानो जुनन्ति।
वस्वी षु ते जरित्रे अस्तु शक्तिर्यूयं पात स्वस्तिभिः सदा नः ॥१०॥

हे इन्द्रदेव ! हामीलाई स्वीकार गरेर तिमी सुरक्षित राख। त्यसो भएपछि तिमीले प्रदान गरेको अन्न उपभोग गर्ने शक्ति हामीभित्र होस्। स्वेच्छापूर्वक हवि प्रदान गर्ने धनवान्लाई सुरक्षित गर। स्तोताहरूमा स्तुति गर्ने शक्ति रहोस्। तिमी कल्याणकारी रक्षण साधनले हामी सबैको सुरक्षा गर।

## [सूक्त - २२]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - विराट्, ९ त्रष्टुप्।

पिबा सोममिन्द्र मन्दतु त्वा यं ते सुषाव हर्यश्वाद्रिः।
सोतुर्बाहुभ्यां सुयतो नार्वा ॥१॥

हे अश्वयुक्त इन्द्रदेव ! आनन्ददायक सोमरस पान गर। सञ्चालकका हातले उचित रूपमा नियन्त्रित घोडाजस्तै ढुङ्गाले सुरक्षा साथ तिम्रा लागि सोमरस निकालिन्छ।

यस्ते मदो युज्यश्चारुरस्ति येन वृत्राणि हर्यश्व हंसि।
स त्वामिन्द्र प्रभूवसो ममत्तु ॥२॥

हे घोडाका समृद्धिशाली स्वामी इन्द्रदेव ! जुन सोमरसका उत्साहले तिमी वृत्रासुर मार्दछौ, त्यस श्रेष्ठ रसले तिमीलाई आनन्द प्रदान गरोस्।

बोधा सु मे मघवन्वाचमेमां यां ते वसिष्ठो अर्चति प्रशस्तिम्।
इमा ब्रह्म सधमादे जुषस्व ॥३॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! विशिष्ट याजकहरू गुणगान गर्दै श्रेष्ठ वाणीले तिम्रो अर्चना गरिरहेका छन्। त्यो राम्रो वाणी विचारपूर्वक स्वीकार गर। यज्ञस्थलमा यो ज्ञानरूपी हविष्य ग्रहण गर।

श्रुधी हवं विपिपानस्याद्रेर्बोधा विप्रस्यार्चतो मनीषाम्।
कृष्वा दुवांस्यन्तमा सचेमा ॥४॥

सोमरस पान गर्ने हे इन्द्रदेव ! हाम्रो आह्वानमा ध्यान देऊ। अर्चना गर्ने ज्ञानीको प्रार्थना सुन। हामीलाई आफ्ना सच्चा मित्रका ठानेर सेवा स्वीकार गर।

न ते गिरो अपि मृष्ये तुरस्य न सुष्टुतिमसुर्यस्य विद्वान्।
सदा ते नाम स्वयशो विवक्मि ॥५॥

हे इन्द्रदेव तिम्रो असाधारण बल जानेका हामी तिम्रो स्तुति छोड्न सक्दैनौं। तिम्रो यश बढाउने स्तोत्र हामी पाठ गर्दछौं।

भूरि हि ते सवना मानुषेषु भूरि मनीषी हवते त्वामित्।
मारे अस्मन्मघवञ्ज्योक्कः ॥६॥

हे ऐश्वर्यवान् इन्द्रदेव ! हामी मानिसहरू तिम्रा लागि सोमयज्ञ गर्दछौं। तिम्रा लागि हवन पनि हुने गर्दछन्। त्यसैले हामीबाट टाढा तिमी नजाऊ।

तुभ्येदिमा सवना शूर विश्वा तुभ्यं ब्रह्माणि वर्धना कृणोमि।
त्वं नृभिर्हव्यो विश्वधासि ॥७॥

हे इन्द्रदेव ! तिम्रा लागि यज्ञका अनेकौं सवन छन्। स्तोत्र पनि तिम्रो यश बढाउनकै लागि हो। मानिसहरूले हवि प्रदान गर्न योग्य तिमी नै छौ।

नू चिन्नु ते मन्यमानस्य दस्मोदश्नुवन्ति महिमानमुग्र। न वीर्यमिन्द्र ते राधः ॥

हे दर्शनीय इन्द्रदेव ! तिम्रो यस्तो सम्माननीय महिमाको पार कसैले पाउन सक्दैन। हे शूरवीर ! तिम्रा पराक्रम र धनको पार कसैले पाउन सक्दैन।

ये च पूर्व ऋषयो ये च नूत्ना इन्द्र ब्रह्माणि जनयन्त विप्राः।
अस्मे ते सन्तु सख्या शिवानि यूयं पात स्वस्तिभिः सदा नः ॥९॥

हे इन्द्रदेव ! प्राचीन र नवीन ऋषिहरूले रचेका स्तोत्रले स्तुत्य भएपछि तिमीले जसरी उनीहरूको कल्याण गर्‍यौ, उसरी नै हामी स्तोताहरूलाई पनि मित्रझैं मानेर कल्याण गर। कृपा गरेर कल्याणकारी साधनले हामी सबैको सुरक्षा गर।

[सूक्त - २३]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

उदु ब्रह्माण्यैरत श्रवस्येन्द्रं समर्ये महया वसिष्ठ।
आ यो विश्वानि शवसा ततानोपश्रोता म ईवतो वचांसि ॥१॥

हे इन्द्रियजित् ऋषि ! आफ्ना शक्तिले सम्पूर्ण भुवनलाई विस्तृत गर्ने, अन्न प्राप्तिका कामनाले यज्ञमा यश बढाउने र उपासकको प्रार्थना सुन्ने इन्द्रदेवको महिमा वर्णन गर्ने खालका स्तोत्र पाठ गर।

अयामि घोष इन्द्र देवजामिरिरज्यन्त यच्छुरुधो विवाचि।
नहि स्वमायुश्चिकिते जनेषु तानीदंहांस्यति पर्ष्यस्मान् ॥२॥

देवताको स्तुति गर्दा शोक नाश गर्ने औषधि बढ्दछ। हे इन्द्रदेव ! मानिसहरू कसैले आफ्नो आयु जान्दैनन्। हामीलाई सबै पापबाट पार लगाऊ।

युजे रथं गवेषणं हरिभ्यामुप ब्रह्माणि जुजुषाणमस्थुः।
वि बाधिष्ट स्य रोदसी महित्वेन्द्रो वृत्राण्यप्रती जघन्वान् ॥३॥

गाई खोजेर पत्तो लगाउने इन्द्रदेवका रथमा हरियो वर्णका दुवै अश्व नियोजित छन्। स्तोत्रले इन्द्रदेवको सेवा गर्दछन्, हामी उनको उपासना गर्दछौं। इन्द्रदेव आफ्ना महिमाले द्यावापृथिवी व्याप्त गर्दछन्। इन्द्रदेव अनौठो तरिकाले वृत्रको वध गर्दछन्।

आपश्चित्पिप्युः स्तर्यो३ न गावो नक्षन्नृतं जरितारस्त इन्द्र।
याहि वायुर्न नियुतो नो अच्छा त्वं हि धीभिर्दयसे वि वाजान् ॥४॥

हे इन्द्रदेव ! तिम्रो कृपाले ब्याउने गाई कम्लाएझैं जलको प्रवाह बढोस्। तिम्रा स्तोताले यज्ञ गरिरहून्। अश्वहरू वायुसमानका वेगले हामीकहाँ आऊन्। तिमी स्तोतालाई बुद्धि, बल र अन्न प्रदान गर्दछौ।

ते त्वा मदा इन्द्र मादयन्तु शुष्मिणं तुविराधसं जरित्रे।
एको देवत्रा दयसे हि मर्तानस्मिञ्छूर सवने मादयस्व ॥५॥

हे इन्द्रदेव ! देवताहरूमा तिमी एउटाले मात्रै हामीमाथि ज्यादै दया गर्दछौ। तिमी यस यज्ञमा सोमरस पान गरेर आनन्दित होऊ। हे शूरवीर इन्द्रदेव ! उपासकलाई यस्तो पुत्र प्रदान गर, जो बलियो र अनेकौं विद्यामा निपुण होस्।

एवेदिन्द्रं वृषणं वज्रबाहुं वसिष्ठासो अभ्यर्चन्त्यर्कैः।
स नः स्तुतो वीरवद्धातु गोमद्यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

वसिष्ठहरू बलवान्, वज्रधारी इन्द्रदेवलाई स्तोत्रले पूजा गर्दछन्। उनी स्तुतिद्वारा प्रसन्न भएर स्तोतालाई वीर र गाईसहित धन प्रदान गर्दछन्। उनी कल्याणकारी साधनले हाम्रो रक्षा गरुन्।

[सूक्त - २४]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

योनिष्ट इन्द्र सदने अकारि तमा नृभिः पुरुहूत प्र याहि।
असो यथा नोऽविता वृधे च ददो वसूनि ममदश्च सोमैः ॥१॥

अनेकौं मानिसबाट स्तुति गरिने हे इन्द्रदेव ! यज्ञवेदिकामा तिमी आफ्ना सहयोगीसँग प्रतिष्ठित हुने कृपा गर। रक्षक, पोषणकर्ता र धनदाता तिमी सोमरस पान गरेर आनन्द अनुभव गर।

गृभीतं ते मन इन्द्र द्विबर्हाः सुतः सोमः परिषिक्ता मधूनि।
विसृष्टधेना भरते सुवृक्तिरियमिन्द्रं जोहुवती मनीषा ॥२॥

हे इन्द्रदेव ! तिमी दुवै स्थानमा पूज्य छौ। तयार गरेका सोमरसमा मह मिसाइएको छ। हामी तिम्रो ध्यानाकर्षण गराउन मनन गर्न योग्य स्तोत्र उच्चारण गर्दछौं।

आ नो दिव आ पृथिव्या ऋजीषिन्निदं बर्हिः सोमपेयाय याहि।
वहन्तु त्वा हरयो मद्र्यञ्चमाङ्गूषमच्छा तवसं मदाय ॥३॥

हे इन्द्रदेव ! तिमी द्युलोक या भूलोकमा जहाँ छौ त्यहाँबाट आऊ। हामीले तिम्रा लागि आसन बिछाएका छौं। घोडाले तिम्रो स्तुति गरिएका ठाउँमा तिमीलाई लिएर जाऊन्। तिमी यहाँ आएपछि ओछ्याएका आसनमा बसेर सोमपान गर्दै आनन्दित होऊ।

आ नो विश्वाभिरूतिभिः सजोषा ब्रह्म जुषाणो हर्यश्व याहि।
वरीवृजत् स्थविरेभिः सुशिप्रास्मे दधद्वृषणं शुष्ममिन्द्र ॥४॥

हे हरियो अश्व भएका र गजबको टोपी लगाउने इन्द्रदेव ! तिमी सबै रक्षण साधनसहित मरुत्‌हरूका सहयोगले शत्रुको वध गर्दछौ। हे इन्द्रदेव ! हामीलाई बलवान् र समर्थ पुत्र प्रदान गर्न हामीकहाँ आऊ।

एष स्तोमो मह उग्राय वाहे धुरी३ वात्यो न वाजयन्नधायि।
इन्द्र त्वायमर्क ईट्टे वसूनां दिवीव द्यामधि नः श्रोमतं धाः ॥५॥

रथ तान्ने अश्वजस्तै बलियो स्तोत्र महान् वीर र विश्वका सञ्चालक इन्द्रदेवका निम्ति प्रस्तुत गरेका छौं। हे इन्द्रदेव ! स्तोत्र गाउनेहरू तिमीबाट दिव्य सम्पदाको कामना गर्दछन्। स्वर्गमा समेत यशस्वी हुन सक्ने वीर पुत्र र धन हामीलाई प्रदान गर।

एवा न इन्द्र वार्यस्य पूर्धि प्र ते महीं सुमतिं वेविदाम।
इषं पिन्व मघवद्भ्यः सुवीरां यूयं पात स्वस्तिभिः सदा नः॥६॥

हे इन्द्रदेव ! हामीलाई कृपा गरेर धन प्रदान गर। हामी तिमीबाट प्रेरित सद्बुद्धि प्राप्त गरौं। हामीजस्ता हव्ययुक्त याजकलाई तिमी वीर पुत्रसहित अन्न र धन प्रदान गर। तिमी हाम्रो पालन र रक्षण गर।

[सूक्त - २५]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

आ ते मह इन्द्रोत्युग्र समन्यवो यत्समरन्त सेनाः।
पताति दिद्युन्नर्यस्य बाह्वोर्मा ते मनो विष्वद्र्यग्वि चारीत्॥१॥

उत्साहित भएका सेनाले सङ्ग्राम गरेका बेला हे मानिसका हितैषि, वज्रधारी, पराक्रमी, वीर इन्द्रदेव ! तिम्रा बाहुमा हुने वज्र शत्रुमाथि खसोस् र हाम्रो रक्षा होस्। तिम्रो सर्वत्र घुम्ने मन अविचलित रहोस् र हाम्रा लागि तिमी हितकारी कार्य गर।

नि दुर्ग इन्द्र श्नथिह्यमित्रानभि ये नो मर्तासो अमन्ति।
आरे तं शंसं कृणुहि निनित्सोरा नो भर सम्भरणं वसूनाम्॥२॥

हे इन्द्रदेव ! हामीलाई जित्ने रहरले सङ्ग्रामका मैदानमा हाम्रा अगाडि उभिएका शत्रु संहार गर। निन्दकलाई हामीदेखि टाढा लैजाऊ। हामीलाई पर्याप्त धन प्रदान गर।

शतं ते शिप्रिन्नूतयः सुदासे सहस्रं शंसा उत रातिरस्तु।
जहि वधर्वनुषो मर्त्यस्यास्मे द्युम्नमधि रत्नं च धेहि॥३॥

हामी तिम्रा उत्तम भक्त हौं। तिमी सयौं रक्षणसाधनले हाम्रो रक्षा गर। तिमीबाट प्रदत्त धन हाम्रो होस्। हिंसक वृत्ति हुनेका शस्त्रअस्त्र नाश गरिदेऊ। हामीलाई यश र दीप्ति भएको रत्न देऊ।

त्वावतो हीन्द्र क्रत्वे अस्मि त्वावतोऽवितुः शूर रातौ।
विश्वेदहानि तविषीव उग्रँ ओकः कृणुष्व हरिवो न मर्धीः॥४॥

हे इन्द्रदेव ! हामी तिम्रा लागि शुभ कार्य गर्नमा खटिएका छौं। तिम्रो अनुकूल रहने संरक्षण हामीलाई प्राप्त होस्। हे बलवान् र तेजस्वी इन्द्रदेव ! हामीलाई सधैंका लागि उपयुक्त आवास बनाऊ। हामीमाथि क्रोध नगर।

कुत्सा एते हर्यश्वाय शूषमिन्द्रे सहो देवजूतमियानाः।
सत्रा कृधि सुहना शूर वृत्रा वयं तरुत्राः सनुयाम वाजम्॥५॥

हरियो अश्व हुने इन्द्रदेवका निम्ति हामी स्तोताहरू सुखकर स्तोत्र गाउँछौं। इन्द्रदेवको देवप्रेरित बलको कामना गर्दछौं। हे शूरवीर इन्द्रदेव ! सम्पूर्ण दुःखबाट पार भएर सजिलै शत्रु विनाश गर्ने बल हामी प्राप्त गरौं।

एवा न इन्द्र वार्यस्य पूर्धि प्र ते महीं सुमतिं वेविदाम।
इषं पिन्व मघवद्भ्यः सुवीरां यूयं पात स्वस्तिभिः सदा नः॥६॥

हे इन्द्रदेव ! हामीलाई संरक्षणीय धनले परिपूर्ण गराऊ। तिमीबाट प्रेरित श्रेष्ठ सुमति हामी प्राप्त गरौं। हामी हविदातालाई तिमी वीर पुत्रसहित अन्न प्रदान गर। तिमी कल्याणकारी साधनले हामीलाई सुरक्षा प्रदान गर।

[सूक्त - २६]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

न सोम इन्द्रमसुतो ममाद नाब्रह्माणो मघवानं सुतासः।
तस्मा उक्थं जनये यज्जुजोषन्नृवन्नवीयः शृणवद्यथा नः॥१॥

स्तोत्र पाठ नगरीकन निकालिएको र इन्द्रदेवका लागि ननिकालिएको सोमरस आनन्द प्रदायक हुँदैन। हामी मानिसका माझमा इन्द्रदेवले सुन्न स्वीकार गर्ने, श्रेष्ठ र नवीन स्तोत्र रचना गर्दछौं।

उक्थउक्थे सोम इन्द्रं ममाद नीथेनीथे मघवानं सुतासः।
यदीं सबाधः पितरं न पुत्राः समानदक्षा अवसे हवन्ते॥२॥

स्तोत्र पाठसँगै तयार गरेका सोमरसले इन्द्रदेवलाई हर्षित गर्दछ। सोमरस अर्पित गर्ने बेलामा धनवान् इन्द्रदेवको स्तुति गर्नाले उनी प्रसन्न हुन्छन्। पुत्रहरू एकासाथ भएर पितालाई बोलाएझैं हामी सबै मानिसहरू आफ्ना कार्यमा निपुण इन्द्रदेवलाई आफ्नो सुरक्षाका लागि बोलाउँछौं।

चकार ता कृणवन्नूनमन्या यानि ब्रुवन्ति वेधसः सुतेषु।
जनीरिव पतिरेकः समानो नि मामृजे पुर इन्द्रः सु सर्वाः ॥३॥

सोमरस तयार गर्दा स्तोत्रमा जेजे कामको वर्णन गरिन्छ, ती सबै पहिले नै इन्द्रदेवले गरेका थिए। यस वेला पनि उनी असल कार्य गर्दछन्। इन्द्रदेव लोग्नेले स्वास्नीलाई अधीनमा राखेझैं शत्रुको नगर अधीनमा राख्दछन्।

एवा तमाहुरुत शृण्व इन्द्र एको विभक्ता तरणिर्मघानाम्।
मिथस्तुर ऊतयो यस्य पूर्वीरस्मे भद्राणि सश्चत प्रियाणि ॥४॥

इन्द्रदेवसित परस्पर सहयोगी शक्ति अनेकौं छन्। तिनीहरूले हामी सबैलाई उनी रक्षा गर्दछन्। स्तोताहरू उनै शक्तिको बयान सुनाउँछन्। यस्ता इन्द्रदेव धन बाँड्नेलाई उद्धार गर्दछन्। उनै देवताले हाम्रो कल्याण गरुन्।

एवा वसिष्ठ इन्द्रमूतये नृन्कृष्टीनां वृषभं सुते गृणाति।
सहस्रिण उप नो माहि वाजान् यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

वसिष्ठ ऋषि प्रजाको कामना पूर्ति र सुरक्षा गर्नका लागि सोमरस तयार गर्दछन्। हे इन्द्रदेव ! हामीलाई अनेकौं कल्याणकारी भोग्य पदार्थ प्रदान गर्दै हाम्रो कल्याण गर।

[सूक्त - २७]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

इन्द्रं नरो नेमधिता हवन्ते यत्पार्या युनजते धियस्ताः।
शूरो नृषाता शवसश्चकान आ गोमति व्रजे भजा त्वं नः ॥१॥

सेनानायकहरू पनि आफ्नो सहायताका लागि इन्द्रदेवलाई आह्वान गर्दछन्। हे इन्द्रदेव ! तिमी पुरुषहरूका धनदाता र बलवर्द्धक हौ। हामीलाई लाभ गराउने गाई गोठसम्म पुऱ्याउने कृपा गर।

य इन्द्र शुष्मो मघवन्ते अस्ति शिक्षा सखिभ्यः पुरुहूत नृभ्यः।
त्वं हि दृळ्हा मघवन्विचेता अपा वृधि परिवृतं न राधः ॥२॥

हे सबै तिरबाट बोलाइने इन्द्रदेव ! स्तोतालाई आफ्नो बल प्रदान गर। हे बलिया बन्धन चुँडाउने र मघवा भनिने इन्द्रदेव ! हामीलाई ज्ञानको गोप्य धन प्रकट गराइदेऊ।

इन्द्रो राजा जगतश्चर्षणीनामधि क्षमि विषुरूपं यदस्ति।
ततो ददाति दाशुषे वसूनि चोदद्राध उपस्तुतश्चिदर्वाक् ॥३॥

इन्द्रदेव सबै प्राणीका स्वामी र पदार्थरूपी धनका राजा हुन्। उनी दान गर्ने बानी हुनेलाई जीवनउपयोगी वस्तु प्रदान गर्दछन्। ती असल सम्पदा हामीतिर पठाऊन्।

नू चित्र इन्द्रो मघवा सहूती दानो वाजं नि यमते न ऊती।
अनूना यस्य दक्षिणा पीपाय वामं नृभ्यो अभिवीता सखिभ्यः ॥४॥

हामी आफ्नो रक्षा र अन्न प्राप्तिका लागि धनदाता इन्द्रदेवलाई बलवान् मरुतहरूसँगै बोलाउँछौं। उनले मरुतहरूका लागि जुन सर्वव्यापी र पूर्ण दान प्रदान गर्दछन्, त्यही श्रेष्ठ दान मानिसका लागि प्रकट गर्दछन्।

नू इन्द्र राये वरिवस्कृधी न आ ते मनो ववृत्याम मघाय।
गोमदश्वावद्रथवद्व्यन्तो यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

हे इन्द्रदेव ! तिमी गाई, अश्व, रथ आदि धनका स्वामी हौ। पूजनीय स्तोत्रले हामी तिम्रो आह्वान गर्दछौं। हामीलाई ऐश्वर्यवान् बनाउनका लागि पर्याप्त धन प्रदान गर। सधैं हाम्रो सुरक्षा र पालन गर्दै कल्याण गर।

[सूक्त - २८]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

ब्रह्मा ण इन्द्रोप याहि विद्वानर्वाञ्चस्ते हरयः सन्तु युक्ताः।
विश्वे चिद्धि त्वा विहवन्त मर्ता अस्माकमिच्छृणुहि विश्वमिन्व ॥१॥

हे इन्द्रदेव ! तिमी सर्वज्ञ छौ, स्तुति सुनेपछि अश्वमा आरूढ भएर हामीकहाँ आऊ। हे समस्त विश्वलाई सन्तोष प्रदान गर्ने इन्द्रदेव ! तिमीलाई कैयौं मानिसले अलगअलग बोलाउँछन्, त्यसो भए तापनि तिमी कृपा गरेर हाम्रो प्रार्थना सुन।

हवं त इन्द्र महिमा व्यानड् ब्रह्म यत्पासि शवसिन्नृषीणाम्।
आ यद्वज्रं दधिषे हस्त उग्र घोरः सन्क्रत्वा जनिष्ठा अषाढः ॥२॥

हे बलवान् इन्द्रदेव ! तिम्रा महिमाले ऋषिका स्तोत्र सुरक्षित रहन्छन्। हे वज्रधारी इन्द्रदेव ! तिमी उद्भट शूरवीर र सधैंका अजेय हौ।

तव प्रणीतीन्द्र जोहुवानान्त्सं यन्नृन्न रोदसी निनेथ।
महे क्षत्राय शवसे हि जज्ञेऽतूतुजिं चित्तूतुजिरशिश्नत् ॥३॥

हे इन्द्रदेव ! जुन स्तोता तिमीबाट प्रणीत पद्धतिअनुसार स्तुति गर्दछन्, तिनी द्युलोक र भूलोकमा आनन्दसहित प्रतिष्ठित हुन्छन्। तिमी क्षात्रबल र धनको बलद्वारा श्रेष्ठ कार्य गर्नका लागि उत्पन्न भएका हौ।

एभिर्न इन्द्राहभिर्दशस्य दुर्मित्रासो हि क्षितयः पवन्ते।
प्रति यच्चष्टे अनृतमनेना अव द्विता वरुणो मायी नः सात् ॥४॥

हे इन्द्रदेव ! हामीमाथि आक्रमण गर्ने दुष्टको धन सधैं हामीलाई प्रदान गर। निष्पाप वरुणदेवले हामीभित्रको असत्य खोजी गरेर दुवै प्रकारले दूर गरुन्।

वोचेमेदिन्द्रं मघवानमेनं महो रायो राधसो यद्ददन्नः।
यो अर्चतो ब्रह्मकृतिमविष्ठो यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

इन्द्रदेव हामीलाई महान् धनऐश्वर्य प्रदान गर्दै स्तोताको रक्षा गर्दछन्। हामी इन्द्रदेवको स्तुति गर्दछौं। धनवान् इन्द्रदेवले सदैव हाम्रो पालन र कल्याण गरुन्।

[सूक्त - २९]

ऋषि – वसिष्ठ मैत्रावरुणि। देवता – इन्द्र। छन्द – त्रिष्टुप्।

अयं सोम इन्द्र तुभ्यं सुन्व आ तु प्र याहि हरिवस्तदोकाः।
पिबा त्व१स्य सुषुतस्य चारोर्ददो मघानि मघवन्नियानः ॥१॥

हे हरियो अश्व भएका इन्द्रदेव ! तिमी शीघ्र आऊ। हामी तिम्रा लागि सोमरस तयार गर्दछौं। तिमी आएर त्यो पान गर र याजकलाई धन प्रदान गर।

ब्रह्मन्वीर ब्रह्मकृतिं जुषाणोऽर्वाचीनो हरिभिर्याहि तूयम्।
अस्मिन्नू षु सवने मादयस्वोप ब्रह्माणि शृणव इमा नः ॥२॥

हे ज्ञानी, वीर इन्द्रदेव ! तिमी हाम्रो उत्तम स्तोत्र सुन र अश्वमा आरूढ भएर हामीतिर चाँडै आऊ। यस सोमयज्ञमा स्तोत्र सुनेर तिमी प्रसन्न होऊ।

का ते अस्त्यरङ्कृतिः सूक्तैः कदा नूनं ते मघवन् दाशेम।
विश्वा मतीरा ततने त्वायाधा म इन्द्र शृणवो हवेमा ॥३॥

हे धनका अधिपति इन्द्रदेव ! हामी वास्तवमा तिमीलाई कसरी प्रसन्न गरौं ? हामी तिम्रा लागि स्तोत्र रचना गर्दछौं। तिमी हाम्रो स्तोत्र सुन। यस सूक्तले कहिले तिमीलाई अलङ्कृत गर्ला भन्ने एउटै अभिलाषा हाम्रा मनमा छ।

उतो घा ते पुरुष्या३ इदासन्येषां पूर्वेषामशृणोर्ऋषीणाम्।
अधाहं त्वा मघवञ्जोहवीमि त्वं न इन्द्रासि प्रमतिः पितेव ॥४॥

हे इन्द्रदेव ! प्राचीन कालका मानवका हितैषि, ऋषिले रचेको स्तोत्र तिमीले सुन्यौ। हामी पनि तिमीलाई बारम्बार स्तुति गर्दछौं। तिमी उत्तम बुद्धि भएका पिताजस्तै हौ।

वोचेमेदिन्द्रं मघवानमेनं महो रायो राधसो यद्ददन्नः।
यो अर्चतो ब्रह्मकृतिमविष्ठो यूयं स्वस्तिभिः सदा नः ॥५॥

इन्द्रदेव हामीलाई महान् धनऐश्वर्य प्रदान गर्दछन् र स्तोताको रक्षा गर्दछन्। हामी इन्द्रदेवको स्तुति गर्दछौं। धनवान् इन्द्रदेवले सदैव हाम्रो पालन र कल्याण गरुन्।

[सूक्त - ३०]

ऋषि – वसिष्ठ मैत्रावरुणि। देवता – इन्द्र। छन्द – त्रिष्टुप्।

आ नो देव शवसा याहि शुष्मिन्भवा वृध इन्द्र रायः अस्य।
महे नृम्णाय नृपते सुवज्र महि क्षत्राय पौंस्याय शूर ॥१॥

हे बलशाली आभासम्पन्न इन्द्रदेव ! हामीकहाँ आऊ र कृपा गरेर हाम्रो धन बढाऊ। हे वज्रधारी इन्द्रदेव ! तिमी महान् क्षात्रबलले सम्पन्न आफ्नो पुरुषार्थ बढाऊ।

हवन्त उ त्वा हव्यं विवाचि तनूषु शूराः सूर्यस्य सातौ।
त्वं विश्वेषु सेन्यो जनेषु त्वं वृत्राणि रन्धया सुहन्तु ॥२॥

हे इन्द्रदेव ! तिमी आह्वान गर्न योग्य छौ। विवादका समयमा मानिसले तिमीलाई बोलाउँछन्। सूर्यदेवको प्राप्तिका लागि मानिसहरू तिमीलाई बोलाउँछन्। समस्त मानवी सेनाका लागि तिमी अनुकरणीय छौ। तिमी सुगमतापूर्वक घात गर्ने सुहन्ता नामका वज्रले शत्रु पराजित गरेर हाम्रो अधीनमा गराइदेऊ।

अहा यदिन्द्र सुदिना व्युच्छान्दधो यत्केतुमुपमं समत्सु।
न्य१ग्निः सीददसुरो न होता हुवानो अत्र सुभगाय देवान् ॥३॥

हे इन्द्रदेव ! हाम्रा दिनहरू राम्रो किसिमले बित्दै जाऊन् र युद्धमा पनि हाम्रो ज्ञानविवेक स्थिर बनेर रहोस् भन्ने उद्देश्यका साथ सुहाउँदो धन प्राप्तिका लागि पराक्रमी होताका रूपमा अग्निदेवले आह्वान गर्दा यस यज्ञमा प्रतिष्ठित होऊ।

वयं ते त इन्द्र ते च देव स्तवन्त शूर ददतो मघानि।
यच्छा सूरिभ्य उपमं वरूथं स्वाभुवो जरणामश्नवन्त ॥४॥

हे शूरवीर इन्द्रदेव ! हामी सबै तिम्रै आफन्त हौं। हामी तिम्रा लागि हवि प्रदान गर्दै स्तुति गर्दछौं। विद्वान्हरूलाई तिमी असल निवास प्रदान गर। उत्तम ऐश्वर्यसम्पन्न भएर उनीहरू बुढेस कालमा सुखले रहून्।

वोचेमेदिन्द्रं मघवानमेनं महो रायो राधसो यद्ददन्नः।
यो अर्चतो ब्रह्मकृतिमविष्ठो यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

इन्द्रदेव हामीलाई महान् धनऐश्वर्य प्रदान गर्दछन् र स्तोताको रक्षा गर्दछन्। हामी इन्द्रदेवको स्तुति गर्दछौं। धनवान् इन्द्रदेवले सदैव हाम्रो पालन र कल्याण गरून्।

[सूक्त - ३१]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र। छन्द - गायत्री विराट्।

प्र व इन्द्राय मादनं हर्यश्वाय गायत। सखायः सोमपाव्ने ॥१॥

हे साधक हो ! अश्वका स्वामी, सोमपान गर्ने इन्द्रदेवलाई आनन्द लाग्ने स्तोत्र गाओ।

शंसेदुक्थं सुदानव उत द्युक्षं यथा नरः। चकृमा सत्यराधसे ॥२॥

हे ऋत्विक्हरू हो ! उत्तम दानदाता, न्यायले उपार्जन गरेका सम्पत्तिका धनी इन्द्रदेवको प्रार्थना गर। हामी पनि उत्तम विधिले उनको प्रार्थना गर्दछौं।

त्वं न इन्द्र वाजयुस्त्वं गव्युः शतक्रतो। त्वं हिरण्ययुर्वसो ॥३॥

हे सयौं यज्ञकर्म गर्ने इन्द्रदेव ! हामीलाई तिमी अन्न, गाई र स्वर्ण प्रदान गर।

वयमिन्द्र त्वायवोऽभि प्र णोनुमो वृषन्। विद्धी त्व१स्य नो वसो ॥४॥

हे श्रेष्ठ वीर इन्द्रदेव ! हामी तिम्रो कामना गर्दै बारम्बार नमस्कार गर्दछौं। सबैलाई आश्रय प्रदान गर्ने तिमीले हाम्रो प्रार्थना सुनेर त्यसमाथि ध्यान दिने कृपा गर।

मा नो निदे च वक्तवेऽर्यो रन्धीरराव्णे। त्वे अपि क्रतुर्मम ॥५॥

हे इन्द्रदेव ! तिमी हाम्रा स्वामी हुनाले कटुभाषी, निन्दक र कन्जुसका वशमा रहन नपरोस् भनेर तिमीसित प्रार्थना गर्दछौं।

त्वं वर्मासि सप्रथः पुरोयोधश्च वृत्रहन्। त्वया प्रति ब्रुवे युजा ॥६॥

हे इन्द्रदेव ! युद्धक्षेत्रमा नजिकै पुगेर शत्रुको नाश गर्नका लागि तिमी विश्वमा प्रसिद्ध छौ। तिमी कवचजस्तै भएर रक्षा गर्दछौ। तिम्रो सहायता पाएर हामी शत्रुको वध गर्नमा समर्थ हुन्छौं।

महाँ उतासि यस्य तेऽनु स्वधावरी सहः। मम्नाते इन्द्र रोदसी ॥७॥

अन्नले सम्पन्न द्यावापृथिवी जुन महान् बललाई नमस्कार गर्दछन्, त्यस्तो महान् इन्द्रदेव तिमी नै हौ।

तं त्वा मरुत्वती परि भुवद्वाणी सयावरी। नक्षमाणा सह द्युभिः ॥८॥

हे इन्द्रदेव ! फैलँदो तेजसँग हिँड्ने वीरको स्तुति सम्पन्न भएर तिमीकहाँ पुगोस्।

ऊर्ध्वासस्त्वान्विन्दवो भुवन्दस्ममुप द्यवि। सं ते नमन्त कृष्टयः ॥९॥

हे इन्द्रदेव ! तिमी स्वर्गका नजिकै र दर्शनीय रूपमा रहेका छौ। तिम्रा लागि सोम प्रस्तुत छ। सबैले तिमीलाई नमस्कार गर्दछन्।

प्र वो महे महिवृधे भरध्वं प्रचेतसे प्र सुमतिं कृणुध्वम्।
विशः पूर्वीः प्र चरा चर्षणिप्राः ॥१०॥

हे मानिसहरू हो ! महान् कार्य सम्पन्न गर्ने, प्रख्यात इन्द्रदेवका लागि सोम प्रदान गर्दै श्रेष्ठ स्तोत्रले उनको स्तुति गर। हे इन्द्रदेव ! तिमी [illegible] प्रजाको कामना पूरा गराउँदै कल्याण गर।

उरुव्यचसे महिने सुवृक्तिमिन्द्राय ब्रह्म जनयन्त विप्राः।
तस्य व्रतानि न मिनन्ति धीराः ॥११॥

अत्यन्त विशाल र महान् इन्द्रदेवलाई ऋत्विक्हरू उत्तम स्तुति तथा हविष्यान्न अर्पित गर्दछन्। धीर पुरुषहरू ती इन्द्रदेवको व्रत डगाउँदैनन्।

इन्द्रं वाणीरनुत्तमन्युमेव सत्रा राजानं दधिरे सहध्यै।
हर्यश्वाय बर्हया समापीन् ॥१२॥

सबैका राजा इन्द्रदेवको फौंक अतुलनीय छ। यस्ता इन्द्रदेवलाई गरेको स्तुति उनका शत्रुको पराजयको कारण बन्छ। हे स्तोताहरू ! आफन्तहरूलाई इन्द्रदेवको स्तुति गर्ने प्रेरणा देओ।

[सूक्त - ३२]

ऋषि - वसिष्ठ मैत्रावरुणि वसिष्ठ। देवता - इन्द्र। छन्द - प्रगाथ द्विपदा विराट्।

मो षु त्वा वाघतश्चनारे अस्मन्नि रीरमन्।
आरात्ताच्चित् सधमादं न आ गहीह वा सन्नुप श्रुधि ॥१॥

हे इन्द्रदेव ! यजमानले तिमीलाई हामीदेखि टाढा पुऱ्याउन नसकून्। तिमी हाम्रा यज्ञमा चाँडै आऊ र हाम्रा नजिकै बसेर हाम्रो स्तुति ध्यानपूर्वक सुन।

इमे हि ते ब्रह्मकृतः सुते सचा मधौ न मक्ष आसते।
इन्द्रे कामं जरितारो वसूयवो रथे न पादमा दधुः ॥२॥

हे इन्द्रदेव ! तिम्रो सन्तुष्टिका लागि सोमरस तयार गर्ने सबै ऋत्विक्हरू माहुरीझैं जम्मा भएर बस्दछन्। ऐश्वर्यको कामनाले रथमा चढेजस्ता तिनीहरू तिमीलाई आहुति समर्पित गर्दछन्।

रायस्कामो वज्रहस्तं सुदक्षिणं पुत्रो न पितरं हुवे ॥३॥

छोराले बाबुलाई बोलाएझैं धन प्राप्तिको इच्छा भएका हामीहरू श्रेष्ठ दानदाता इन्द्रदेवलाई आह्वान गर्दछौं।

इम इन्द्राय सुन्विरे सोमासो दध्याशिरः।
ताँ आ मदाय वज्रहस्त पीतये हरिभ्यां याह्योक आ ॥४॥

हे वज्रधारी, तेजस्वी इन्द्रदेव ! दही मिसिएको, आनन्ददायक, विशेष रूपले तयार यो सोमरस पान गर्नका लागि तिमी यज्ञस्थलमा आऊ।

श्रवच्छ्रुत्कर्ण ईयते वसूनां नू चिन्नो मर्धिषद् गिरः।
सद्यश्चिद्यः सहस्राणि शता ददन्नकिर्दित्सन्तमा मिनत् ॥५॥

इन्द्रदेव प्रार्थना सुन्नका लागि समर्थ छन्, उनीसित हामी धन माग्दछौं। उनले हाम्रो बोली नसुनेझैं नगरून्। सयौं वा हजारौं किसिमका दान तत्काल दिन तयार इन्द्रदेवलाई कसैले पनि धन दिनबाट रोक्न सक्दैन।

स वीरो अप्रतिष्कुत इन्द्रेण शूशुवे नृभिः।
यस्ते गभीरा सवनानि वृत्रहन्त्सुनोत्या च धावति ॥६॥

हे वृत्रलाई मार्ने इन्द्रदेव ! तिम्रा लागि प्रचुर मात्रामा सोमरस तयार गर्ने वीरप्रति तिमी अनुकूल हुन्छौ, त्यसरी नै तिमी मानिसहरूको सम्मान पाउँछौ।

भवा वरूथं मघवन्मघोनां यत्समजासि शर्धतः।
वि त्वाहतस्य वेदनं भजेमह्या दूणाशो भरा गयम् ॥७॥

हे धनवान् इन्द्रदेव ! तिमी कवचजस्तै भएर हविदाताको सुरक्षा गर र शत्रुको विनाश गरेर प्राप्त गरेको धन हामीलाई देऊ। हामीलाई अविनाशी धन प्रदान गर।

सुनोता सोमपाव्ने सोममिन्द्राय वज्रिणे।
पचता पक्तीरवसे कृणुध्वमित्पृणन्नित्पृणते मयः ॥८॥

हे याजकहरू हो ! वज्रधारी सोमरस पान गर्ने इन्द्रदेवका लागि सोम पेलेर तयार गर। इन्द्रदेवलाई प्रसन्न गर्नका लागि पुरोडाश पकाएर यज्ञ गर। यजमानलाई सुखी बनाउने इन्द्रदेव स्वयं हविष्यान्न ग्रहण गर्दछन्।

मा स्त्रेधत सोमिनो दक्षता महे कृणुध्वं राय आतुजे।
तरणिरिज्जयति क्षेति पुष्यति न देवासः कवत्नवे ॥९॥

दक्षतापूर्वक सोमयाग पूरा गर्नबाट पछि नहटौं। शत्रुनाशक इन्द्रदेवका निमित्त धन प्राप्तिका इच्छाले शुभ कर्म गरौं। शीघ्रतापूर्वक कार्य गर्ने अवश्य नै विजय प्राप्त गर्दछ र पुष्ट भएर उत्तम घरमा निवास गर्दछ। खराब कर्म गर्नेका सहायक देवता हुँदैनन्।

नकिः सुदासो रथं पर्यास न रीरमत्।
इन्द्रो यस्याविता यस्य मरुतो गमत्स गोमति व्रजे ॥१०॥

सुदासका रक्षक इन्द्रदेव र मरुत्‌गण हुन्। त्यसैले उनको रथ कतै पुऱ्याउन वा उनलाई रोक्न कसैले सक्दैन। उनलाई गाईका गोठ प्राप्त होऊन्।

गमद्वाजं वाजयन्निन्द्र मर्त्यो यस्य त्वमविता भुवः।
अस्माकं बोध्यविता रथानामस्माकं शूर नृणाम् ॥११॥

हे इन्द्रदेव ! तिमी जसको रक्षा गर्दछौ, त्यसले तिम्रो यशोगान गर्दै अन्न आदि प्राप्त गर्दछ। हे शूरवीर ! तिमी हाम्रा पुत्रपौत्रादि एवं रथको रक्षा गर।

उदिन्न्वस्य रिच्यतेऽशो धनं न जिग्युषः।
य इन्द्रो हरिवान्न दभन्ति तं रिपो दक्षं दधाति सोमिनि ॥१२॥

जुन यजमान हरि नामक अश्वयुक्त इन्द्रदेवका लागि सोमरस तयार गरेर अर्पित गर्दछन्, उनले इन्द्रदेवका कृपाले प्राप्त बलद्वारा शत्रु जित्छन्।

मन्त्रमखर्वं सुधितं सुपेशसं दधात यज्ञियेष्वा।
पूर्वीश्चन प्रसितयस्तरन्ति तं य इन्द्रे कर्मणा भुवत् ॥१३॥

यजनीय देवताहरूमध्ये इन्द्रदेवका लागि ज्यादै कुँदिएका र सुन्दर शोभनीय स्तोत्र स्तोताले अर्पित गरुन्। जसको स्तोत्र इन्द्रदेव मनैदेखि स्वीकार गर्दछन् उसलाई कसैका कुनै पनि बन्धनले दुःख दिन सक्दैन।

कस्तमिन्द्र त्वावसुमा मर्त्यो दधर्षति।
श्रद्धा इत्ते मघवन्पार्ये दिवि वाजी वाजं सिषासति ॥१४॥

हे सबैका आश्रयदाता इन्द्रदेव ! तिमीलाई कसले पो अपमानित गर्न सक्ला ? हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमीप्रति श्रद्धा राख्नेहरू बलशाली हुन्छन्। उनीहरू दुःखबाट पार हुने बेलामा पनि सहयोग प्राप्त गर्दछन्।

मघोनः स्म वृत्रहत्येषु चोदय ये ददति प्रिया वसु।
तव प्रणीती हर्यश्व सूरिभिर्विश्वा तरेम दुरिता ॥१५॥

हे वैभवशाली इन्द्रदेव ! हविष्यान्न समर्पित गर्ने याजकलाई दुष्ट दुराचारीसित सङ्घर्ष गर्ने शक्ति प्रदान गर। हे अश्वपति ! तिम्रा प्रेरणाले ज्ञानीले पापबाट मुक्ति पाऊन्।

तवेदिन्द्रावमं वसु त्वं पुष्यसि मध्यमम्।
सत्रा विश्वस्य परमस्य राजसि नकिष्ट्वा गोषु वृण्वते ॥१६॥

हे इन्द्रदेव ! निम्न कोटि, मध्यम कोटि र उत्तम कोटिका धनका तिमीमात्रै एउटा स्वामी हौ। तिमीले गाई आदि धन दान गर्दा कसैले पनि तिमीलाई रोक्न सक्दैन।

त्वं विश्वस्य धनदा असि श्रुतो य ईं भवन्त्याजयः।
तवायं विश्वः पुरुहूत पार्थिवोऽवस्युर्नाम भिक्षते ॥१७॥

हे समस्त धन दान गर्ने इन्द्रदेव ! जुनसुकै युद्धमा तिम्रो ख्याति छ। अनेकौं तिरबाट बोलाइने प्रशंसित हे वीर इन्द्रदेव ! भूलोकका सबै मानिस तिमीसित रक्षा र अन्नको याचना गर्दछन्।

**यदिन्द्र यावतस्त्वमेतावदहमीशीय।**
**स्तोतारमिद्दिधिषेय रदावसो न पापत्वाय रासीय॥१८॥**

हे सम्पत्तिका धनी इन्द्रदेव ! तिमीजस्तै सम्पदाको अधिपति हुने रहर हामी गर्दछौं। स्तोतालाई धन प्रदान गर्ने हाम्रो इच्छा छ, तर पापीलाई होइन।

**शिक्षेयमिन्महयते दिवेदिवे राय आ कुहचिद्विदे।**
**नहि त्वदन्यन्मघवन्न आप्यं वस्यो अस्ति पिता चन॥१९॥**

जहाँ रहे पनि हामी तिम्रो यजनका लागि धन निकाल्दछौं। हे इन्द्रदेव ! तिमीबाहेक मेरो त अर्को कुनै दाजुभाइ नै छैन, पिताजस्तो रक्षक पनि कोही छैन।

**तरणिरित्सिषासति वाजं पुरन्ध्या युजा।**
**आ व इन्द्रं पुरुहूतं नमे गिरा नेमिं तष्टेव सुद्रवम्॥२०॥**

तत्परताका साथ कार्य गर्नेले नै उन्नतिशील भएर अन्न र बल प्राप्त गर्दछ। सिकर्मीले गोलो पाङ्ग्रो बनाएझैं हामी आफ्ना स्तोत्रले इन्द्रदेवलाई आफूतिर झुकाउँछौं।

**न दुष्टुती मर्त्यो विन्दते वसु न स्रेधन्तं रयिर्नशत्।**
**सुशक्तिरिन्मघवन्तुभ्यं मावते देष्णं यत्पार्ये दिवि॥२१॥**

मानिसका दुष्ट बोलीले धन पाउन सक्दैन। हिंसकसित धनैश्वर्य रहँदैन। हे मघवा ! मजस्ताले पार पाउन तिमीले दिनुपर्ने धन उत्तम कर्म गरेर पाउन सक्दछ।

**अभि त्वा शूर नोनुमोऽदुग्धाइव धेनवः।**
**ईशानमस्य जगतः स्वर्दृशमीशानमिन्द्र तस्थुषः॥२२॥**

हे शूरवीर इन्द्रदेव ! तिमी यस स्थावर र जङ्गम संसारका स्वामी हौ। नदुहिएको गाई बाच्छो भेट्नका लागि लालायित भएझैं दिव्य दृष्टिसम्पन्न तिम्रो दर्शनका लागि हामी लालायित रहन्छौं।

**न त्वावाँ अन्यो दिव्यो न पार्थिवो न जातो न जनिष्यते।**
**अश्वायन्तो मघवन्निन्द्र वाजिनो गव्यन्तस्त्वा हवामहे॥२३॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! यस पृथ्वीमा वा दिव्य लोकमा तिमीजस्तो अर्को न कोही छ, न थियो र न त कहिल्यै हुने नै छ। हे देव ! अश्व, गाई र धनधान्यको कामना गर्ने हामी स्तोताहरू तिम्रो प्रार्थना गर्दछौं।

**अभी षतस्तदा भरेन्द्र ज्यायः कनीयसः।**
**पुरूवसुर्हि मघवन्त्सनादसि भरे भरे च हव्यः॥२४॥**

हे ऐश्वर्यसम्पन्न इन्द्रदेव ! [illegible] प्रदान गर्ने कृपा गर। तिमी [illegible]

**परा णुदस्व मघवन्नमित्रान्त्सुवेदा नो वसू कृधि।**
**अस्माकं बोध्यविता महाधने भवा वृधः सखीनाम्॥२५॥**

हे मघवा ! शत्रुलाई पछिल्तिर फिर्ता पठाउँदै हामीदेखि टाढा पुऱ्याइदेऊ र हामीलाई सजिलै धन देऊ। हे देव ! हाम्रो शरणस्थल तिमी नै हौ। हाम्रो रक्षा गर्दै तिमी हामीलाई बढिरहने धन प्रदान गर।

**इन्द्र क्रतुं न आ भर पिता पुत्रेभ्यो यथा।**
**शिक्षा णो अस्मिन्पुरुहूत यामनि जीवा ज्योतिरशीमहि॥२६॥**

हे इन्द्रदेव ! हामीलाई उत्तम कर्मको फल प्राप्त होस्। पिताले पुत्रलाई धन आदि दिएर पालनपोषण गरेझैं हामीलाई तिमी पोषित गर। अनेकौंले सहायताका लागि बोलाइने हे इन्द्रदेव ! यज्ञमा हामीलाई तिमी दिव्य तेज प्रदान गर।

**मा नो अज्ञाता वृजना दुराध्यो३ माशिवासो अव क्रमुः।**
**त्वया वयं प्रवतः शश्वतीरपोऽति शूर तरामसि॥२७॥**

हे इन्द्रदेव ! अज्ञात पापी, दुष्ट, कुटिल, अमङ्गलकारीले हामीमाथि आक्रमण नगरुन्। हे श्रेष्ठ वीर ! तिम्रो संरक्षणमा हामी विघ्नअवरोधका प्रवाह पार गरौं।

[सूक्त - ३३]

ऋषि - वसिष्ठ मैत्रावरुणि पुत्रगण। देवता - वसिष्ठ पुत्रगण। छन्द - त्रिष्टुप्।

**श्वित्यञ्चो मा दक्षिणतस्कपर्दा धियंजिन्वासो अभि हि प्रमन्दुः।**
**उत्तिष्ठन्वोचे परि बर्हिषो नृन्न मे दूरादवितवे वसिष्ठाः ॥१॥**

गोरो वर्णका, शिरको दाहिनेतिर जटाको शिखा भएका, बुद्धिसङ्गत कार्य गर्ने वसिष्ठ गोत्रीयहरू हामीलाई अति प्रसन्न गराउँछन्। यज्ञका कुशआसनबाट माथि उठ्दै हामी यस्ता वसिष्ठका वंशज शिष्यहरू हामीदेखि टाढा नजाऊन् भन्दछौं।

**दूरादिन्द्रमनयन्ना सुतेन तिरो वैशन्तमति पान्तमुग्रम्।**
**पाशद्युम्नस्य वायतस्य सोमात्सुतादिन्द्रोऽवृणीता वसिष्ठान् ॥२॥**

वसिष्ठ गोत्रीय साधकहरू उग्र इन्द्रदेवलाई पाशद्युम्नले तयार गरेको सोमरसबाट छुट्याएर आफूले तयार गरेको सोमरस पान गराउनका लागि परबाट लिएर आउँछन्। इन्द्रदेव पनि वयतका पुत्र पाशद्युम्नलाई छोडेर वसिष्ठ वंशीहरूलाई स्वीकार गर्छन्।

**एवेन्नु कं सिन्धुमेभिस्ततारेवेन्नु कं भेदमेभिर्जघान।**
**एवेन्नु कं दाशराज्ञे सुदासं प्रावदिन्द्रो ब्रह्मणा वो वसिष्ठाः ॥३॥**

वसिष्ठका पुत्रहरूले सजिलै सिन्धु तरेर भेदलाई नाश गरे। त्यसपछि दाशराजका प्रसिद्ध युद्धमा वसिष्ठका पुत्रका बलले इन्द्रदेवले सुदासको रक्षा गरे।

**जुष्टी नरो ब्रह्मणा वः पितृणामक्षमव्ययं न किला रिषाथ।**
**यच्छक्वरीषु बृहता रवेणेन्द्रे शुष्ममदधाता वसिष्ठाः ॥४॥**

हे मानिसहरू हो ! आफ्नो लक्ष्यप्रति हामी सक्रिय छौं। तिमीहरू सबै बलवान् होओ र शक्वरी ऋचाहरूसँगै बृहत् स्तुति गाएर इन्द्रदेवको बल बढाओ। तिमीहरूका स्तोत्रले पितृहरू पनि सन्तुष्ट हुन्छन्।

**उद् द्यामिवेत्तृष्णजो नाथितासोऽदीधयुर्दाशराज्ञे वृतासः।**
**वसिष्ठस्य स्तुवत इन्द्रो अश्रोदुरुं तृत्सुभ्यो अकृणोदु लोकम् ॥५॥**

तृष्ण वंशका, कामना लिएका वसिष्ठका वंशजले दाशराजका युद्धमा इन्द्रलाई तेजस्वी सूर्यजस्तै रूपमा धारण गरे। इन्द्रदेवले उनीहरूको स्तोत्र सुनेर तृत्सुहरूलाई विशाल लोक प्रदान गरे।

**दण्डाइवेद्गो अजनास आसन्परिच्छिन्ना भरता अर्भकासः।**
**अभवच्च पुरएता वसिष्ठ आदित्तृत्सूनां विशो अप्रथन्त ॥६॥**

गाई धपाउने लौरोजस्तै सोझो गतिमा इन्द्रिय नियन्त्रण गर्ने सङ्कल्पजस्ता भरतहरू थोरै र साना थिए तर वसिष्ठ पुरोहित भएपछि उनीहरूको सङ्ख्या र क्षमता वृद्धि भयो।

**त्रयः कृण्वन्ति भुवनेषु रेतस्तिस्रः प्रजा आर्या ज्योतिरग्राः।**
**त्रयो घर्मास उषसं सचन्ते सर्वाँ इत्ताँ अनु विदुर्वसिष्ठाः ॥७॥**

भरिपूर्ण भुवन तीन हुन्छन्। ज्योतितर्फ अघि बढ्ने तीन महान् प्रजा छन्। तीनै बटाले उष्णतायुक्त उषाको सेवन गर्दछन्। वसिष्ठका वंशज सबै यो कुरो राम्ररी जान्दछन्।

**सूर्यस्येव वक्षथो ज्योतिरेषां समुद्रस्येव महिमा गभीरः।**
**वातस्येव प्रजवो नान्येन स्तोमो वसिष्ठा अन्वेतवे वः ॥८॥**

हे वसिष्ठपुत्र हो ! तिमीहरूको महिमा सूर्यको ज्योतिजस्तै टड्कारो र समुद्रजस्तै गम्भीर छ। वायुजस्तै तीव्रगामी तिमीहरूको स्तोत्र अद्वितीय छ।

**त इन्निण्यं हृदयस्य प्रकेतैः सहस्रवल्शमभि सं चरन्ति।**
**यमेन ततं परिधिं वयन्तोऽप्सरस उप सेदुर्वसिष्ठाः ॥९॥**

वसिष्ठहरू हृदयको गूढ ज्ञान प्रकट गर्दै सहस्रौं शाखाले युक्त संसारमा सम्यक् रूपले विचरण गर्दछन्। उनीहरू नियमपूर्वक चलेको बाटो अनुसरण गर्दै मातृरूपा अप्सराका नजिकै पुग्दछन्।

**विद्युतो ज्योतिः परि सञ्जिहानं मित्रावरुणा यदपश्यतां त्वा।**
**तत्ते जन्मोतैकं वसिष्ठागस्त्यो यत्त्वा विश आजभार ॥१०॥**

हे वसिष्ठ ! विद्युत्का ज्योतिले छुट्टिँदै गरेका तिमीलाई मित्रावरुणले देखेपछि अगस्त्यले प्रजाहरूबाट बाहिर ल्याए। त्यसै बेला तिम्रो एउटा जन्म भयो।

उतासि मैत्रावरुणो वसिष्ठोर्वश्या ब्रह्मन्मनसोऽधि जातः।
द्रप्सं स्कन्नं ब्रह्मणा दैव्येन विश्वे देवाः पुष्करे त्वाददन्त ॥११॥

हे वसिष्ठ ऋषि ! तिमी मित्रावरुणका पुत्र हौ। हे ब्रह्मन् ! तिमी उर्वशीका मनबाट उत्पन्न भयौ। तिमीलाई दिव्य मन्त्रका साथ विश्वेदेवले पुष्करमा धारण गरे।

स प्रकेत उभयस्य प्रविद्वान्त्सहस्रदान उत वा सदानः।
यमेन ततं परिधिं वयिष्यन्नप्सरसः परि जज्ञे वसिष्ठः ॥१२॥

वसिष्ठ दुवै लोकका समस्त विषयका विशेष विद्वान् हुन्। हजारौं किसिमका दान दिन्छन्। सर्वनियामकले विस्तार गरेका सिर्जनशीलताका नियमअनुसाशन चलाउनका लागि यिनी उर्वशीबाट उत्पन्न भएका हुन्।

सत्रे ह जाताविषिता नमोभिः कुम्भे रेतः सिषिचतुः समानम्।
ततो ह मान उदियाय मध्यात्ततो जातमृषिमाहुर्वसिष्ठम् ॥१३॥

मित्र र वरुण दुवैले त्यस यज्ञमा एकै साथ रेतस्लाई कुम्भमा स्थापित गरे। त्यसबाट अगस्त्य उत्पन्न भए। यसै प्रक्रियाले वसिष्ठ पनि उत्पन्न भए भनिन्छ।

उक्थभृतं सामभृतं बिभर्ति ग्रावाणं बिभ्रत्प्र वदात्यग्रे।
उपैनमाध्वं सुमनस्यमाना आ वो गच्छाति प्रतृदो वसिष्ठः ॥१४॥

हे भरतहरू हो ! वसिष्ठ ऋषि तिमीहरूकहाँ आउँदै छन्। तिमीहरू सबैले प्रसन्न मनले यी सम्मानितलाई सत्कार गर। वसिष्ठ ऋषि उक्थ र साम गाउने तथा सोमरस तयार गर्नेहरूलाई उचित नेतृत्व गर्दछन्।

## [सूक्त - ३४]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - विश्वेदेवा अहिर्बुध्य। छन्द - द्विपदा विराट्।

प्र शुक्रैतु देवी मनीषा अस्मत्सुतष्टो रथो न वाजी ॥१॥

बलिया अश्वले तानेको र राम्रोसित बनेको रथजस्तै देवी मनीषा हाम्रा नजिक आऊन्।

विदुः पृथिव्या दिवो जनित्रं शृण्वन्त्यापो अध क्षरन्तीः ॥२॥

ओरालोतिर बग्ने पानीले द्यावापृथिवीको उत्पत्ति जान्दछ। त्यसले सुन्छ पनि।

आपश्चिदस्मै पिन्वन्त पृथ्वीर्वृत्रेषु शूरा मंसन्त उग्राः ॥३॥

पृथ्वीमा विद्यमान जलले इन्द्रदेवलाई पुष्टि प्रदान गर्दछ। शत्रुले आक्रमण गर्दा यिनै शूरवीर इन्द्रदेवलाई विद्वान्हरू बोलाउँछन्।

आ धूर्ष्वस्मै दधाताश्वानिन्द्रो न वज्री हिरण्यबाहुः ॥४॥

वज्रधारी र स्वर्णमय हात भएका इन्द्रदेवलाई ल्याउन रथमा अश्व नियोजित गरौं।

अभि प्र स्थाताहेव यज्ञं यातेव पत्मन्त्मना हिनोत ॥५॥

हे मानिस हो ! यज्ञ गर्ने इच्छाले स्वयं सहर्ष, तीव्र वेगले अवश्य अगाडि बढौं।

त्मना समत्सु हिनोत यज्ञं दधात केतुं जनाय वीरम् ॥६॥

हे मानिस हो ! सङ्ग्राममा आफैं जाऔं र वीर पुरुषलाई प्रेरित गरौं। संसारको हितका लागि यज्ञ गरौं।

उदस्य शुष्माद्भानुर्नार्त बिभर्ति भारं पृथिवी न भूम ॥७॥

यसै यज्ञका बलले सूर्यदेव उदाउँछन्। पृथ्वीले सबै प्राणीको भारी बोकेझैं यज्ञ पनि सबैको आधार हो।

ह्वयामि देवाँ अयातुरग्ने साधन्नृतेन धियं दधामि ॥८॥

हे अहिंसक अग्निदेव ! हामी साधनाले यज्ञका देवताहरूको आह्वान गर्दछौं र बुद्धिलाई देवताको सेवामा नियुक्त गर्दछौं।

अभि वो देवीं धियं दधिध्वं प्र वो देवत्रा वाचं कृणुध्वम् ॥९॥

हे मानिस हो ! तिमीहरू देवताका निम्ति बुद्धिको प्रयोग गर र देवताको स्तुति गर।

आ चष्ट आसां पाथो नदीनां वरुण उग्रः सहस्रचक्षाः ॥१०॥

हजारौं आँखा भएका ओजस्वी वरुणदेव नदीका जलको निरीक्षण गरिरहन्छन्।

राजा राष्ट्रानां पेशो नदीनामनुत्तमस्मै क्षत्रं विश्वायु ॥११॥
राष्ट्रका राजाजस्तै वरुणदेवता नदीका रूपमा आफ्नै बलले सबै ठाउँमा पुग्दछन्।
अविष्टो अस्मान्विश्वासु विक्ष्वद्युं कृणोत शंसं निनित्सोः ॥१२॥
हे देवताहरू हो ! कृपा गरेर हाम्रो रक्षा गर, हाम्रो निन्दा गर्ने शत्रुको तेज नष्ट गराओ।
व्येतु दिद्युद् द्विषामशेवा युयोत विष्वग्रपस्तनूनाम् ॥१३॥
हे देवताहरू हो ! तिमीहरू हाम्रो कुभलो गर्न खोज्ने शत्रुलाई चाँर तिरबाट हतियारले प्रतिकार गर। हाम्रो शारीरिक पाप पनि पर लगिदेओ।
अवीत्रो अग्निर्हव्यान्नमोभिः प्रेष्ठो अस्मा अधायि स्तोमः ॥१४॥
हामीले अग्निदेवप्रति विनम्रतापूर्वक स्तोत्र गाएका छौं। अन्न भक्षण गर्ने, प्रिय अग्निदेव प्रसन्न भएर हाम्रो रक्षा गरुन्।
सजूर्देवेभिरपां नपातं सखायं कृध्वं शिवो नो अस्तु ॥१५॥
अग्निदेव जललाई माथि उठाउँछन्, उनो सखा भावले हाम्रो रक्षा गरुन्।
अब्जामुक्थैरहिं गृणीषे बुध्ने नदीनां रजःसु षीदन् ॥१६॥
नदीका छेउमा स्थापित अग्निदेवलाई स्तोत्रले स्तुति गरौं। जलका उत्पादक अग्निदेवले शत्रु मार्दछन्।
मा नोऽहिर्बुध्न्यो रिषे धान्मा यज्ञो अस्य स्रिधदृतायोः ॥१७॥
मेघमा रहेका अग्निदेवले हामीमाथि प्रहार नगरुन्। सत्यमय जीवन बाँच्नेहरूको यज्ञ क्षीण हुँदैन।
उत न एषु नृषु श्रवो धुः न राये यन्तु शर्धन्तो अर्यः ॥१८॥
धनको ऐश्वर्य प्राप्तिमा हाम्रा प्रतिस्पर्धी हामीदेखि पर पुगून्। हामीहरू पर्याप्त मात्रामा धन, यश र अन्न प्राप्त गरौं।
तपन्ति शत्रुं स्वर्ण भूमा महासेनासो अमेभिरेषाम् ॥१९॥
विशाल सेनायुक्त राजा आफ्ना दैवी शक्तिले शत्रुलाई सूर्यदेवले झैं सन्तप्त पार्दछन्।
आ यन्नः पत्नीर्गमन्त्यच्छा त्वष्टा सुपाणिर्दधातु वीरान् ॥२०॥
पत्नीहरू हाम्रा नजिक आएका बेला त्वष्टाले उत्तम बाहुद्वारा वीरलाई धारण गरुन्।
प्रति नः स्तोमं त्वष्टा जुषेत स्यादस्मे अरमतिर्वसूयुः ॥२१॥
उत्तम बुद्धि भएका त्वष्टादेवले हाम्रो यज्ञ स्वीकार गरुन् र प्रसन्न भएर हामीलाई मनग्गे धन दिऊन्।
ता नो रासन्रातिषाचो वसून्या रोदसी वरुणानी शृणोतु।
वरूत्रीभिः सुशरणो नो अस्तु त्वष्टा सुदत्रो वि दधातु रायः ॥२२॥
उनले हामीलाई अभीष्ट धन दिने खालको दिव्य शक्ति प्रदान गरुन्। हामीले गाउँदै गरेको स्तुति द्यावापृथिवी र वरुणदेवका शक्तिले सुनून्। श्रेष्ठ दानदाता त्वष्टादेव विघ्ननिवारक शक्तिसहित हाम्रा लागि शरणदाता बनून् र हामीलाई ऐश्वर्य प्रदान गरुन्।
तन्नो रायः पर्वतास्तन्न आपस्तद्रातिषाच ओषधीरुत द्यौः।
वनस्पतिभिः पृथिवी सजोषा उभे रोदसी परि पासतो नः ॥२३॥
पर्वत, जल, औषधि र द्युलोक वनस्पतिसहित अन्तरिक्ष एवं देवशक्तिले हाम्रो प्राणरूपी धन संरक्षण गरुन्।
अनु तदुर्वी रोदसी जिहातामनु द्युक्षो वरुण इन्द्रसखा।
अनु विश्वे मरुतो ये सहासो रायः स्याम धरुणं धियध्यै ॥२४॥
विशाल द्यावापृथिवी, शत्रु जित्ने मरुत्‌हरू, तेजस्वी इन्द्रदेव र उनका मित्र वरुणदेव आदि देवताहरू हाम्रा सहयोगी होऊन्। यिनका कृपाले हामी धारण गर्न योग्य धन प्राप्त गरौं।
तन्न इन्द्रो वरुणो मित्रो अग्निराप ओषधीर्वनिनो जुषन्त।
शर्मन्त्स्याम मरुतामुपस्थे यूयं पात स्वस्तिभिः सदा नः ॥२५॥
इन्द्रदेव, मित्रदेव, वरुणदेव, औषधिहरू, जल र वनका वृक्षका निम्ति हामी स्तोत्र पाठ गर्दछौं। हामीलाई मरुत्‌हरूसँग मङ्गलकारी स्थान प्राप्त होस्। तिनीहरू सबैले हामीलाई कल्याणकारी संरक्षण साधनले सुरक्षित राखून्।

[सूक्त - ३५]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप।

**शं न इन्द्राग्नी भवतामवोभिः शं न इन्द्रावरुणा रातहव्या।**
**शमिन्द्रासोमा सुविताय शं योः शं न इन्द्रापूषणा वाजसातौ ॥१॥**

दिन र रात हाम्रो सबैका लागि मङ्गलकारी होऊन्। इन्द्र र अग्निदेव तथा इन्द्र र वरुणदेवले हाम्रा सबैको कल्याण गरुन्। इन्द्र र पूषादेवले मङ्गलकारी अन्नऐश्वर्य प्रदान गरुन्। इन्द्र र सोमदेव सुसन्तान प्राप्ति, रोग निवारण र भयमुक्त गराउँदै हाम्रा लागि कल्याणकारी होऊन्।

**शं नो भगः शमु नः शंसो अस्तु शं नः पुरन्धिः शमु सन्तु रायः।**
**शं नः सत्यस्य सुयमस्य शंसः शं नो अर्यमा पुरुजातो अस्तु ॥२॥**

भगदेवताले हामीलाई शान्ति प्रदान गरुन्। यो शान्ति सबै मानिसबाट प्रशंसित होस्। बुद्धि र धनले हामीलाई शान्ति प्रदान गरुन्। श्रेष्ठ र शिष्ट बोलीवचन शान्तिदायक होऊन्। अर्यमादेव हामीलाई शान्ति दिने होऊन्।

**शं नो धाता शमु धर्ता नो अस्तु शं न उरूची भवतु स्वधाभिः।**
**शं रोदसी बृहती शं नो अद्रिः शं नो देवानां सुहवानि सन्तु ॥३॥**

धाता, धर्ता, द्यावापृथिवी, पृथ्वीको अन्न, पर्वत, देवताको उपासना यी सबै हाम्रा लागि शान्तिप्रदायक र कल्याणप्रद होऊन्।

**शं नो अग्निर्ज्योतिरनीको अस्तु शं नो मित्रावरुणावश्विना शम्।**
**शं नः सुकृतां सुकृतानि सन्तु शं न इषिरो अभि वातु वातः ॥४॥**

तेजस्वी अग्निदेव, मित्रावरुण, सूर्यदेव, चन्द्रदेव, अश्विनीकुमार, सत्कर्म र गमनशील वायुदेवले हामीलाई शान्ति प्रदान गरुन्।

**शं नो द्यावापृथिवी पूर्वहूतौ शमन्तरिक्षं दृशये नो अस्तु।**
**शं न ओषधीर्वनिनो भवन्तु शं नो रजसस्पतिरस्तु जिष्णुः ॥५॥**

द्यावापृथिवीले हामीलाई पहिलो पटक प्रार्थनामै शान्ति प्रदान गरुन्। उत्तम दर्शनका निम्ति अन्तरिक्षले हामीलाई शान्ति प्रदान गरोस्। वनस्पति र औषधिले हामीलाई शान्ति प्रदान गरुन् र विजयशील लोकपालहरूले पनि शान्ति प्रदान गरुन्।

**शं न इन्द्रो वसुभिर्देवो अस्तु शमादित्येभिर्वरुणः सुशंसः।**
**शं नो रुद्रो रुद्रेभिर्जलाषः शं नस्त्वष्टा ग्नाभिरिह शृणोतु ॥६॥**

इन्द्रदेवताले वसुगणका साथमा शान्ति प्रदान गरुन्। आदित्यका साथमा वरुणदेवताले, रुद्रगणका साथमा जलदेवताले हामीलाई शान्ति प्रदान गरुन्। त्वष्टादेव र देवपत्नीले समेत हामीलाई शान्ति प्रदान गरुन्, सबैले हाम्रो विनय सुनुन्।

**शं नः सोमो भवतु ब्रह्म शं नः शं नो ग्रावाणः शमु सन्तु यज्ञाः।**
**शं नः स्वरूणां मितयो भवन्तु शं नः प्रस्वः शम्वस्तु वेदिः ॥७॥**

सोम र ग्रावाले हामीलाई शान्ति प्रदान गरुन्। ब्रह्म र यज्ञदेवले हामीलाई शान्ति प्रदान गरुन्। मौलोले, औषधिले र वेदीले पनि हामीलाई उसरी नै शान्ति दिऊन्।

**शं नः सूर्य उरुचक्षा उदेतु शं नश्चतस्रः प्रदिशो भवन्तु।**
**शं नः पर्वता ध्रुवयो भवन्तु शं नः सिन्धवः शमु सन्त्वापः ॥८॥**

विशाल तेजधारी सूर्यदेव हामीलाई शान्ति दिनका लागि उदित होऊन्। चारै दिशाले हामीलाई शान्ति दिऊन्, स्थिर पर्वत, जल र समुद्रले हामीलाई शान्ति प्रदान गरुन्।

**शं नो अदितिर्भवतु व्रतेभिः शं नो भवन्तु मरुतः स्वर्काः।**
**शं नो विष्णुः शमु पूषा नो अस्तु शं नो भवित्रं शम्वस्तु वायुः ॥९॥**

अदितिका व्रतनियमले हामीलाई शान्ति प्रदान गरुन्। उत्तम तेजस्वी मरुत्गणले हामीलाई शान्ति प्रदान गरुन्। विष्णुदेव, पूषादेव, अन्तरिक्ष र वायुदेवले हामीलाई शान्ति प्रदान गरुन्।

**शं नो देवः सविता त्रायमाणः शं नो भवन्तूषसो विभातीः।**
**शं नः पर्जन्यो भवतु प्रजाभ्यः शं नः क्षेत्रस्य पतिरस्तु शम्भुः ॥१०॥**

रक्षा गर्ने वा मुक्तिदाता सवितादेवले हामीलाई शान्ति प्रदान गरुन्। तेजस्वी उषाहरूले हामीलाई

शान्ति प्रदान गरुन्। पर्जन्य र क्षेत्रका कल्याणकारी अधिपति हाम्रा प्रजाका लागि शान्तिप्रदायक मङ्गलकारी होऊन्।

**शं नो देवा विश्वदेवा भवन्तु शं सरस्वती सह धीभिरस्तु।**
**शमभिषाचः शमु रातिषाचः शं नो दिव्याः पार्थिवाः शं नो अप्याः ॥११॥**

विश्वदेवले हामीलाई शान्ति प्रदान गरुन्। सद्बुद्धि दिने सरस्वती देवीले हामीलाई शान्ति प्रदान गरुन्। यज्ञकर्ता, दानदाता, द्युलोक, पृथ्वी र जलका देवताले हामीलाई शान्ति प्रदान गरुन्।

**शं नः सत्यस्य पतयो भवन्तु शं नो अर्वन्तः शमु सन्तु गावः।**
**शं न ऋभवः सुकृतः सुहस्ताः शं नो भवन्तु पितरो हवेषु ॥१२॥**

सत्यका अधिपति, अश्व र गाईले हामीलाई शान्ति दिऊन्। श्रेष्ठ कर्म गर्ने र श्रेष्ठ भुजा भएका ऋभुहरूले हामीलाई शान्ति प्रदान गरुन्। हाम्रा पितृहरूले हाम्रो प्रार्थना सुनेर हामीलाई शान्ति प्रदान गरुन्।

**शं नो अज एकपाद्देवो अस्तु शं नोऽहिर्बुध्न्यः शं समुद्रः।**
**शं नो अपां नपात्पेरुरस्तु शं नः पृश्निर्भवतु देवगोपा ॥१३॥**

अज, एकपाद, अहिर्बुध्न्य, समुद्रदेवले हामीलाई शान्ति दिऊन् र कल्याण गरुन्। अपांनपात्देवले हामीलाई शान्ति दिऊन्। देवताहरूबाट संरक्षित गाई, प्रकृति र किरणले हामीलाई शान्ति दिऊन्।

**आदित्या रुद्रा वसवो जुषन्तेदं ब्रह्म क्रियमाणं नवीयः।**
**शृण्वन्तु नो दिव्याः पार्थिवासो गोजाता उत ये यज्ञियासः ॥१४॥**

नवरचित स्तोत्रलाई आदित्यगण, वसुगण र रुद्रगणले ग्रहण गरुन्। द्युलोक, पृथ्वी र स्वर्गमा उत्पन्न देवगण र अरू जेजति यजनीय देवताहरू छन्, ती सबैले हाम्रो स्तुति स्वीकार गरुन्।

**ये देवानां यज्ञिया यज्ञियानां मनोर्यजत्रा अमृता ऋतज्ञाः।**
**ते नो रासन्तामुरुगायमद्य यूयं पात स्वस्तिभिः सदा नः ॥१५॥**

यजनीय देवताहरूका लागि जो पूज्य छन् र मानिसका लागि जो पूज्य छन्, त्यस्ता सबै अमर, ऋतगणले आज प्रसन्न भएर हामीलाई यशस्वी पुत्र प्रदान गरुन् र हाम्रो पालन गर्दै कल्याण गरुन्।

[सूक्त – ३६]

ऋषि – वसिष्ठ मैत्रावरुणि। देवता – विश्वेदेवा। छन्द – त्रिष्टुप्।

**प्र ब्रह्मैतु सदनादृतस्य वि रश्मिभिः ससृजे सूर्यो गाः।**
**वि सानुना पृथिवी सस्र उर्वी पृथु प्रतीकमध्येधे अग्निः ॥१॥**

ऋतको गृहरूपी यज्ञशालाबाट ब्रह्मज्ञानका स्तोत्र प्रसरित भएर सूर्य आदि देवतासम्म पुग्दछन्। सूर्यदेव आफ्ना किरणले जल वर्षा गराउँछन्। पर्वत आदिसहित विस्तृत पृथ्वीमा अग्निदेव प्रदीप्त हुन्छन्।

**इमां वां मित्रावरुणा सुवृक्तिमिषं न कृण्वे असुरा नवीयः।**
**इनो वामन्यः पदवीरदब्धो जनं च मित्रो यतति ब्रुवाणः ॥२॥**

हे बलशाली वरुण र मित्रदेव ! तिमीहरूका लागि नवीन स्तोत्र रचना गर्दछौं। तिमीहरू दुईमध्ये एक वरुणदेव प्रभुतासम्पन्न छौ। तिमी निष्पक्ष रूपले धर्म र अधर्मको निर्णय गरेर सुनिश्चित स्थान प्रदान गर्दछौ। अर्का मित्रदेव प्रशंसा गरिँदाखेरि धर्मको मार्गतिर प्रेरणा प्रदान गर्दछौ।

**आ वातस्य ध्रजतो रन्त इत्या अपीपयन्त धेनवो न सूदाः।**
**महो दिवः सदने जायमानोऽचिक्रदद् वृषभः सस्मिन्नूधन् ॥३॥**

वायुदेव गतिपूर्वक चारै दिशामा विचरण गर्दछन्। अन्तरिक्षमा गर्जने मेघ सुन्दर भएर बर्सन्छन्। त्यस जलका वर्षाले दुध दिने गाई बढ्दछन्।

**गिरा य एता युनजद्धरी त इन्द्र प्रिया सुरथा शूर धायू।**
**प्र यो मन्युं रिरिक्षतो मिनात्या सुक्रतुमर्यमणं ववृत्याम् ॥४॥**

हे इन्द्रदेव ! जुन यजमानले स्तुति पाठ गरेर तिम्रा बलवान् अश्वलाई रथमा नियोजित गराउँछ, तिमी त्यस यजमानका यज्ञशालामा जान्छौ। जुन देवता शत्रुका हिंसक वृत्ति नष्ट गर्दछन्, हामी उनै अर्यमादेवलाई आह्वान गर्दछौं।

यजन्ते अस्य सख्यं वयश्च नमस्विनः स्व ऋतस्य धामन्।
वि पृक्षो बाबधे नृभिः स्तवान इदं नमो रुद्राय प्रेष्ठम् ॥५॥

याजकहरू अन्न प्राप्तिका लागि यज्ञद्वारा रुद्रदेवलाई स्तुतिले प्रसन्न गर्दछन्। उनै रुद्रदेवलाई हामी सबैले नमस्कार गर्दछौं।

आ यत्साकं यशसो वावशानाः सरस्वती सप्तथी सिन्धुमाता।
याः सुष्वयन्त सुदुघाः सुधारा अभि स्वेन पयसा पीप्यानाः ॥६॥

माताको जस्तै स्नेह र जलले भरिएका सिन्धु र सरस्वती आदि सात नदीहरू पर्याप्त जलराशिले युक्त भएर प्रवाहमान रहून्। तिनीहरू आफ्ना जलले परिपूर्ण भएर अन्न र दुध आदि बढाउँदै प्रवाहमान रहून्।

उत त्ये नो मरुतो मन्दसाना धियं तोकं च वाजिनोऽवन्तु।
मा नः परि ख्यदक्षरा चरन्त्यवीवृधन्युज्यं ते रयिं नः ॥७॥

आनन्दवर्द्धक पराक्रमी मरुत्‌हरू हाम्रा पुत्रका सद्‌बुद्धिले प्रेरित कर्म सुरक्षित राखून्। वाणीका अधिपति देवता हामीमाथि सधैं प्रसन्न रहून्। उनले हाम्रो धन बढाउँछन्।

प्र वो महीमरमतिं कृणुध्वं प्र पूषणं विदथ्यं न वीरम्।
भगं धियोऽवितारं नो अस्याः सातौ वाजं रातिषाचं पुरन्धिम् ॥८॥

हे स्तोताहरू हो ! तिमीहरू यी विशाल र महान् पृथ्वीदेवीलाई आह्वान गर। यजनीय, योद्धा र पराक्रमी पूषादेवको आह्वान गर। बुद्धिसङ्गत कर्म गर्नका लागि प्रेरित गर्ने भगदेव र पुरातन, दानवीर वाजदेवलाई यज्ञमा आह्वान गर।

अच्छायं वो मरुतः श्लोक एत्वच्छा विष्णुं निषिक्तपामवोभिः।
उत प्रजायै गृणते वयो धुर्यूयं पात स्वस्तिभिः सदा नः ॥९॥

हे मरुत्‌हरू हो ! तिमीहरू र गर्भसंरक्षक, आश्रयदाता विष्णुदेवकहाँ यो स्तोत्र पुगोस्। उनले हामीलाई पुत्र र अन्न प्रदान गरुन्। तिमीहरू सधैं हाम्रो पालन र कल्याण गर।

## [सूक्त - ३७]

ऋषि – वसिष्ठ मैत्रावरुणि। देवता – विश्वेदेवा। छन्द – त्रिष्टुप्।

आ वो वाहिष्ठो वहतु स्तवध्यै रथो वाजा ऋभुक्षणो अमृक्तः।
अभि त्रिपृष्ठैः सवनेषु सोमैर्मदे सुशिप्रा महभिः पृणध्वम् ॥१॥

हे तेजस्वी ऋभुगण ! तिमीहरू गतिलो र निरापद रथमा आरूढ भएर गमन गर। हे सुन्दर चिउँडो भएका ऋभुहरू हो ! तिमीहरू सबै दुध, दही र सातु मिसिएको सोमरस पान गरेर आनन्दित होओ।

यूयं ह रत्नं मघवत्सु धत्थ स्वर्दृश ऋभुक्षणो अमृक्तम्।
सं यज्ञेषु स्वधावन्तः पिबध्वं वि नो राधांसि मतिभिर्दयध्वम् ॥२॥

हे आत्मदर्शी बलवान् ऋभु हो ! तिमीहरू सोमपान गर्दै हामी हविदातालाई विशेष रत्न आदि प्रदान गर। बुद्धिसहित सिद्धि प्रदान गर्ने ऐश्वर्य हामीलाई प्रदान गर।

उवोचिथ हि मघवन्देष्णं महो अर्भस्य वसुनो विभागे।
उभा ते पूर्णा वसुना गभस्ती न सूनृता नि यमते वसव्या ॥३॥

हे धनका अधिपति ! महान् धन र अल्प धनको विभाग गर्दा तिमी पनि आफ्नो भाग ग्रहण गर्दछौ। हे देव ! तिम्रा दुवै हातमा मनग्गे धन छ। तिमी निर्विघ्न दान दिन्छौ।

त्वमिन्द्र स्वयशा ऋभुक्षा वाजो न साधुरस्तमेष्यृक्वा।
वयं नु ते दाश्वांसः स्याम ब्रह्म कृण्वन्तो हरिवो वसिष्ठाः ॥४॥

हे यशस्वी इन्द्रदेव ! तिमी श्रेष्ठ साधक र ऋभुहरूका स्वामी हौ, हामीजस्ता स्तोताका घरमा आऊ। हे हरियो वर्णका अश्व भएका पराक्रमी देवता ! हामी वसिष्ठहरू स्तुति गर्दै तिम्रा निम्ति हवि अर्पित गर्दछौं।

सनितासि प्रवतो दाशुषे चिद्याभिर्विवेषो हर्यश्व धीभिः।
ववन्मा नु ते युज्याभिरूती कदा न इन्द्र राय आ दशस्येः ॥५॥

हरियो वर्णका अश्व भएका हे देवता ! तिमी हाम्रो स्तुति सुन। हविदाता याजकलाई तिमी उत्तम धन प्रदान गर। तिमी धन कहिले प्रदान गर्दछौ ? आजसम्म हामी तिम्रो संरक्षणमा सुरक्षित रहँदै तिम्रो भजन गर्दै छौं।

वासयसीव वेधसस्त्वं नः कदा न इन्द्र वचसो बुबोधः।
अस्तं तात्या धिया रयिं सुवीरं पृक्षो नो अर्वा न्युहीत वाजी ॥६॥

हे इन्द्रदेव तिमी कहिले हाम्रो भनाइ र प्रार्थना सुन्दछौ ? तिमी हाम्रा आश्रयदाता हौ। स्तुतिले प्रसन्न भएर आफ्ना बलवान् तथा तीव्रगामी अश्वमा हामीकहाँ आऊ र पराक्रमी पुत्र, धन एवं अन्न देऊ।

अभि यं देवी निर्ऋतिश्चिदीशे नक्षन्त इन्द्रं शरदः सुपृक्षः।
उप त्रिबन्धुर्जरदष्टिमेत्यस्ववेशं यं कृणवन्त मर्ताः ॥७॥

पृथ्वीले जसलाई ईश्वर मानेको छन्, समस्त अन्नयुक्त संवत्सरले जसलाई सुख प्रदान गर्दछन्, मानिसहरू जसलाई आफ्ना घरमा प्रतिष्ठित गराउँछन्, त्यस्ता त्रिलोकका बन्धु इन्द्रदेवले हामीलाई विशाल बल प्रदान गरुन्।

आ नो राधांसि सवितः स्तवध्या आ रायो यन्तु पर्वतस्य रातौ।
सदा नो दिव्यः पायुः सिषक्तु यूयं पात स्वस्तिभिः सदा नः ॥८॥

हे सवितादेव ! हामीलाई आफ्नो धन प्रदान गर। पर्वतले प्रदान गरेको धन हामीलाई प्राप्त होस्। इन्द्रदेव आफ्ना संरक्षण शक्तिले सधैं हाम्रो रक्षा गरुन् र हामी सबैलाई पालन गरुन्।

[सूक्त - ३८]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - सविता भग वाजिन्। छन्द - त्रिष्टुप्।

उदु ष्य देवः सविता ययाम हिरण्ययीममतिं यामशिश्रेत्।
नूनं भगो हव्यो मानुषेभिर्वि यो रत्ना पुरूवसुर्दधाति ॥१॥

हे सवितादेव ! तिमी आफ्नो सुवर्ण आभा प्रकट गर्दछौ। मानिसहरू सवितादेवको स्तुति गर्दछन्। अनेक धनका स्वामी तिनले स्तोतालाई श्रेष्ठ धन प्रदान गर्दछन्।

उदु तिष्ठ सवितः श्रुध्यस्य हिरण्यपाणे प्रभृतावृतस्य।
व्युर्वीं पृथ्वीममतिं सृजान आ नृभ्यो मर्तभोजनं सुवानः ॥२॥

हे सवितादेव ! तिमी उदित होऊ। हे स्वर्णमयी बाहु भएका देवता ! तिमी व्यापक आभाले मानिसका उपयोगमा काम लाग्ने धन र अन्न प्रदान गर्दछौ।

अपि ष्टुतः सविता देवो अस्तु यमा चिद्विश्वे वसवो गृणन्ति।
स नः स्तोमान्नमस्य१ श्चनो धाद्विश्वेभिः पातु पायुभिर्नि सूरीन् ॥३॥

हामी सवितादेवको स्तुति गर्दछौं। जुन सवितादेव सबै देवताद्वारा स्तुत्य छन्, उनै पूजनीय सवितादेवले स्तोत्र एवं अन्न स्वीकार गरुन्। हे देव ! तिमी आफ्ना समस्त रक्षण शक्तिद्वारा स्तोतालाई पालन गर।

अभि यं देव्यदितिर्गृणाति सवं देवस्य सवितुर्जुषाणा।
अभि सम्राजो वरुणो गृणन्त्यभि मित्रासो अर्यमा सजोषाः ॥४॥

अदिति देवी जुन सवितादेवको स्तुति गर्दछिन् र जुन देवताको प्रेरणा पालन गर्दछिन्, उनै सवितादेवको स्तुति मित्रावरुणदेव र अर्यमादेवले पनि गर्दछन्।

अभि ये मिथो वनुषः सपन्ते रातिं दिवो रातिषाचः पृथिव्याः।
अहिर्बुध्न्य उत नः शृणोतु वरूत्र्येकधेनुभिर्नि पातु ॥५॥

सबै दानी भक्तहरू आपसमा जुटेर द्युलोक र पृथिवीलोकका सखाजस्ता सवितादेवको सेवा गर्दछन्। त्यस्ता अहिर्बुध्न्य देवले हाम्रो स्तुति सुनून्। वाणीकी देवीले विशेष वाणीरूपी धेनुद्वारा हामी सबैलाई पालन गरुन्।

अनु तन्नो जास्पतिर्मंसीष्ट रत्नं देवस्य सवितुरियानः।
भगमुग्रोऽवसे जोहवीति भगमनुग्रो अध याति रत्नम् ॥६॥

प्रजाको पालन गर्ने सवितादेवले हाम्रो प्रार्थना सुनेर हामीलाई रत्न आदि प्रदान गरुन्। पराक्रमी स्तोता भगदेवलाई सुरक्षा प्राप्तिका लागि प्रार्थना गर्दछौं। जो पराक्रमी हुँदैनन्, तिनले केवल धन माग्दछन्।

**शं नो भवन्तु वाजिनो हवेषु देवताता मितद्रवः स्वर्काः ।**
**जम्भयन्तोऽहिं वृकं रक्षांसि सनेम्यस्मद्युयवन्नमीवाः ॥७॥**

सन्तुलित गति भएका, स्तुत्य, अन्न र बल प्रदान गर्ने देवताले यज्ञीय प्रार्थनाबाट सन्तुष्ट भएर हामी सबैलाई सुख प्रदान गरून्। यी देवताले दान नगर्ने दुष्टको संहार गरून्। सबै खालका पुराना रोगबाट हामी मुक्त होऔं।

**वाजेवाजेऽवत वाजिनो नो धनेषु विप्रा अमृता ऋतज्ञाः ।**
**अस्य मध्वः पिबत मादयध्वं तृप्ता यात पथिभिर्देवयानैः ॥८॥**

हे बलशाली वाजी देवताहरू हो ! तिमीहरू अमर, सत्ययज्ञका ज्ञाता र विद्वान छौ। तिमीहरू धनका लागि हुने युद्धमा हाम्रो रक्षा गर। तिमीहरू यस यज्ञमा आएर सोमरस पान गरेर आनन्दित होओ र सन्तुष्ट भएपछि देवयानका मार्गबाट प्रस्थान गर।

[सूक्त - ३९]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - विश्वेदेवा। **छन्द** - त्रिष्टुप।

**ऊर्ध्वो अग्निः सुमतिं वस्वो अश्रेत्प्रतीची जूर्णिर्देवतातिमेति।**
**भेजाते अद्री रथ्येव पन्थामृतं होता न इषितो यजाति ॥१॥**

हे उँभोतिर उठ्ने अग्निदेव ! तिमी आफ्ना याजकको स्तुति सुन। पूर्व दिशामा रहने उषादेवी यस यज्ञमा आऊन्। आदरणीय याजकका पतिपत्नी, रथीजस्तै भएर यज्ञका मार्गमा आश्रय लिन्छन्। होताहरू यज्ञ गर्दछन्।

**प्र वावृजे सुप्रया बर्हिरेषामा विश्पतीव बीरिट इयाते।**
**विशामक्तोरुषसः पूर्वहूतौ वायुः पूषा स्वस्तये नियुत्वान् ॥२॥**

सबै प्राणीको कल्याणका लागि नियुत नाम भएका वाहनमा आरूढ वायुदेव र पूषादेव रातको अन्त्य अवस्था उषा कालमा मानिसहरूले बोलाउँदा राजाजस्तै भएर आउँदछन्। यी दुवै देवताहरूका लागि यज्ञशालामा उत्तम प्रकारले कुशको आसन तयार हुन्छन्।

**ज्मया अत्र वसवो रन्त देवा उरावन्तरिक्षे मर्जयन्त शुभ्राः।**
**अर्वाक् पथ उरुज्रयः कृणुध्वं श्रोता दूतस्य जग्मुषो नो अस्य ॥३॥**

यस यज्ञमा वसुगण भूमिमा विचरण गर्दछन्। विशाल अन्तरिक्षमा रहने मरुत्‌हरूको सेवा यस यज्ञमा हुन्छ। हे वसुहरू हो ! तिमीहरू हाम्रा दूतका प्रार्थनामा ध्यान दिएर हामीकहाँ आओ।

**ते हि यज्ञेषु यज्ञियास ऊमाः सधस्थं विश्वे अभि सन्ति देवाः।**
**ताँ अध्वर उशतो यक्ष्यग्ने श्रुष्टी भगं नासत्या पुरन्धिम् ॥४॥**

रक्षा गर्ने यजनीय विश्वेदेव यज्ञमा आएका छन्। हे अग्निदेव ! तिमी यज्ञमा उपस्थित देवताहरूका निम्ति यजन गर। हे भगदेव ! अश्विनीकुमार र इन्द्रदेवको सत्कार गर।

**आग्ने गिरो दिव आ पृथिव्या मित्रं वह वरुणमिन्द्रमग्निम्।**
**आर्यमणमदितिं विष्णुमेषां सरस्वती मरुतो मादयन्ताम् ॥५॥**

हे अग्निदेव ! द्युलोक र पृथ्वीले स्तुति गर्न योग्य मित्र, वरुण, इन्द्र, अग्नि, अर्यमा, अदिति, विष्णु आदि देवतालाई हाम्रा यस यज्ञमा बोलाऊ। देवी सरस्वती र मरुत्‌हरू यहाँ आएर आनन्दित होऊन्।

**ररे हव्यं मतिभिर्यज्ञियानां नक्षत्कामं मर्त्यानामसिन्वन्।**
**धाता रयिमविदस्यं सदासां सक्षीमहि युज्येभिर्नु देवैः ॥६॥**

यजनीय देवताहरूका निम्ति हामी स्तोत्र र हवि अर्पित गर्दछौं। मानिसका प्रगतिको कामनाले अग्निदेव यजन गरुन्। हामी तिम्रा समस्त सहायक देवताहरूलाई आह्वान गर्दछौं। प्रसन्न भएर सबै देवताले हामीलाई स्थायी एवं अक्षय धन प्रदान गरुन्।

**नू रोदसी अभिष्टुते वसिष्ठैर्ऋतावानो वरुणो मित्रो अग्निः।**
**यच्छन्तु चन्द्रा उपमं नो अर्कं यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

आज वसिष्ठहरूले द्यावापृथिवीको स्तुति सुनिश्चित गरे। यजनीय वरुण, इन्द्र र अग्निदेवको स्तुति गरे। आनन्ददाता देवताले हामीलाई पूजामा प्रयोग गर्ने श्रेष्ठतम अन्न र धन प्रदान गरुन्।

[सूक्त - ४०]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप।

**ओ श्रुष्टिर्विदथ्या३ समेतु प्रति स्तोमं दधीमहि तुराणाम्।**
**यदद्य देवः सविता सुवाति स्यामास्य रत्निनो विभागे ॥१॥**

हामी वेगवान् देवताहरूका लागि स्तोत्र पाठ गर्दछौं। हामीलाई सँगै मिलेर काम गर्दाको सुख प्राप्त होस्। रत्नका स्वामी सवितादेवले आफ्नो धन बाँड्दाखेरि उपस्थित रहेर हामी पनि त्यो धन प्राप्त गरौं।

**मित्रस्तन्नो वरुणो रोदसी च द्युभक्तमिन्द्रो अर्यमा ददातु।**
**दिदेष्टु देव्यदिती रेक्णो वायुश्च यन्नियुवैते भगश्च ॥२॥**

मित्र, वरुण, द्यावापृथिवी, इन्द्र, अर्यमा, वायु, भगदेव र अदितिदेवीसहित समस्त देवताहरू हाम्रा स्तोत्रले प्रसन्न भएर हामीलाई तेजस्वीहरूका लागि उत्तम हुने श्रेष्ठ धन प्रदान गरुन्।

**सेदुग्रो अस्तु मरुतः स शुष्मी यं मर्त्यं पृषदश्वा अवाथ।**
**उतेमग्निः सरस्वती जुनन्ति न तस्य रायः पर्येतास्ति ॥३॥**

हे तीव्र वेगका पाङ्ग्रे घोडा भएका मरुत्‌हरू हो ! तिमीहरू महान् पराक्रमी र बलवान् मानिसको सुरक्षा गर्दछौ। त्यस्ता मानिसलाई अग्निदेव, देवी सरस्वती र अन्य देवताहरूले प्रेरणा दिएर सत्कर्ममा खटाउँछन्। त्यस्ता मानिसको धन नाश हुँदैन।

**अयं हि नेता वरुण ऋतस्य मित्रो राजानो अर्यमापो धुः।**
**सुहवा देव्यदितिरनर्वा ते नो अंहो अति पर्षन्नरिष्टान् ॥४॥**

सत्य मार्गमा नेतृत्व गर्ने शासक देवता, वरुण, मित्र, अर्यमा आदिले हामीबाट गरिएको श्रेष्ठ कार्य स्वीकार गरुन्। विस्तृत तेजस्वी देवी अदिति वन्दनीय छन्। सबै देवताहरू हाम्रा असल कर्म निर्विघ्न रूपमा सम्पन्न गराउनका लागि सहायक भएर हामीलाई पाप कर्मबाट जोगाऊन्।

**अस्य देवस्य मीळ्हुषो वया विष्णोरेषस्य प्रभृथे हविर्भिः।**
**विदे हि रुद्रो रुद्रियं महित्वं यासिष्टं वर्तिरश्विनाविरावत् ॥५॥**

देवताहरू यज्ञमा हविद्वारा उपासना गरिने र मनको रहर पूरा गराउने विष्णुदेवका अंश हुन्। रुद्रदेवले आफ्नो महत्त्वपूर्ण शक्ति हामीलाई प्रदान गरुन्। हे अश्विनीकुमार हो ! तिमीहरू अन्नले भरिएका हाम्रा घरमा आओ।

**मात्र पूषन्नाघृण इरस्यो वरूत्री यद्रातिषाचश्च रासन्।**
**मयोभुवो नो अर्वन्तो नि पान्तु वृष्टिं परिज्मा वातो ददातु ॥६॥**

हे तेजस्वी पूषादेव ! सर्वश्रेष्ठ देवी सरस्वती र दानशील दिव्य शक्तिको धन प्राप्त गराउन तिमी हाम्रो सहायक होऊ। सर्वत्रगामी वायुदेवले जल वर्साएर सहयोग गरुन्। उन्नतिशील तथा सुखदायक देवताहरूले हाम्रो कल्याण र पोषण गरुन्।

**नू रोदसी अभिष्टुते वसिष्ठैर्ऋतावानो वरुणो मित्रो अग्निः।**
**यच्छन्तु चन्द्रा उपमं नो अर्कं यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

आज वसिष्ठहरूले द्यावापृथिवीको सुनिश्चित स्तुति गरे। यजनीय वरुण, इन्द्र र अग्निदेवको स्तुति गरे। आनन्ददाता देवताले हामीलाई पूजामा प्रयोग गर्ने श्रेष्ठतम अन्न र धन प्रदान गरुन्।

[सूक्त - ४१]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - लिङ्गोक्त देवता उषा। छन्द - त्रिष्टुप् जगती।

**प्रातरग्निं प्रातरिन्द्रं हवामहे प्रातर्मित्रावरुणा प्रातरश्विना।**
**प्रातर्भगं पूषणं ब्रह्मणस्पतिं प्रातः सोममुत रुद्रं हुवेम ॥१॥**

हामी बिहान अग्निदेवलाई आह्वान गर्दछौं। यज्ञको सफलताका लागि इन्द्रदेव, मित्र, वरुण, अश्विनीकुमार, भग, पूषा, ब्रह्मणस्पति, सोम र रुद्रदेवलाई आह्वान गर्दछौं।

**प्रातर्जितं भगमुग्रं हुवेम वयं पुत्रमदितेर्यो विधर्ता।**
**आध्रश्चिद्यं मन्यमानस्तुरश्चिद्राजा चिद्यं भगं भक्षीत्याह ॥२॥**

हामी जगत्‌लाई धारण गर्ने, उग्र वीर र विजयशील भगदेवताको स्तुति गर्दछौं। उनी अदितिका पुत्र हुन्, उनको स्तुति गर्नाले दरिद्र पनि धनवान् हुन्छ। राजा पनि उनीसित धनको याचना गर्दछन्।

भग प्रणेतर्भग सत्यराधो भगेमां धियमुदवा ददन्नः ।
भग प्र णो जनय गोभिरश्वैर्भग प्र नृभिर्नृवन्तः स्याम ॥३॥

हे भगदेवता ! तिमी नै सत्कर्मका भग हौ। शाश्वत सत्य नै भग हो। हे भगदेव ! हाम्रो स्तुतिबाट प्रसन्न भएर इच्छा लागेको सत्यको धन प्रदान गर। हे देवता ! हामीलाई गाई, घोडा, पुत्र आदि प्रदान गर। अगाडि मानिसका समाजमा रहने बनाऊ।

उतेदानीं भगवन्तः स्यामोत प्रपित्व उत मध्ये अह्नाम् ।
उतोदिता मघवन्त्सूर्यस्य वयं देवानां सुमतौ स्याम ॥४॥

हे देव ! तिम्रो कृपाले हामी भाग्यमान बनौं। दिनको प्रारम्भ र मध्यमा हामी भाग्यवान् रहौं। हे धनवान् भगदेवता ! हामी सूर्योदयमा पनि देवताको अनुग्रह प्राप्त गरौं।

भग एव भगवाँ अस्तु देवास्तेन वयं भगवन्तः स्याम ।
तं त्वा भग सर्व इज्जोहवीति स नो भग पुरएता भवेह ॥५॥

हे देवताहरू हो ! भगदेवता नै ऐश्वर्यवान हुन्। उनले कृपा गरेर हामीलाई धनवान् बनाऊन्। हे भगदेवता ! मानव समुदाय तिम्रो आह्वान गर्दछ, हाम्रो यज्ञमा आऊ।

समध्वरायोषसो नमन्त दधिक्रावेव शुचये पदाय ।
अर्वाचीनं वसुविदं भगं नो रथमिवाश्वा वाजिन आ वहन्तु ॥६॥

दधिक्रावाको जस्तै पवित्र पद प्राप्तिका लागि उषा कालमा यज्ञमा आऊ। शीघ्रगामी अश्वले रथ हिँडाएझैं ती धनवान् भगदेव हामीकहाँ आऊन्।

अश्वावतीर्गोमतीर्न उषासो वीरवतीः सदमुच्छन्तु भद्राः ।
घृतं दुहाना विश्वतः प्रपीता यूयं पात स्वस्तिभिः सदा नः ॥७॥

समस्त गुणले युक्त अश्व, गाई, वीरले युक्त एवं घिउले सेचन गर्ने कल्याणकारी उषाहरूले हाम्रो घर उज्यालो पारून्। उनले सधैं हाम्रो पालन गर्दै कल्याण गरून्।

[सूक्त - ४२]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - विश्वदेवा। छन्द - त्रिष्टुप्।

प्र ब्रह्माणो अङ्गिरसो नक्षन्त प्र क्रन्दनुर्नभन्यास्य वेतु।
प्र धेनव उदप्रुतो नवन्त युज्यातामद्री अध्वरस्य पेशः ॥१॥

अङ्गिरसका मन्त्रहरू सर्वव्यापी होऊन्। पर्जन्य हाम्रा स्तोत्र सुन्न इच्छुक रहून्। प्रसन्नता प्रदान गर्ने नदीहरू जलको सेचन गर्दै प्रवाहित होऊन्। आदरणीय यजमानका पत्नीले यज्ञको स्वरूप अझै राम्रो बनाऊन्।

सुगस्ते अग्ने सनवित्तो अध्वा युक्ष्वा सुते हरितो रोहितश्च।
ये वा सद्मन्नरुषा वीरवाहो हुवे देवानां जनिमानि सत्तः ॥२॥

हे अग्निदेव ! तिम्रो चिरपुरातन गमनयोग्य मार्ग सुगम बनोस्। श्यामवर्ण र लालवर्णका अश्वहरू यज्ञशालामा वीरलाई ल्याउँछन्। यस्ता तेजस्वी घोडा भएका रथमा आरुढ भएर यज्ञमा आऊ। देवता प्रकट गर्नका निम्ति हामी स्तोत्र गान गर्दछौं।

समु वो यज्ञं महयन्नमोभिः प्र होता मन्द्रो रिरिच उपाके।
यजस्व सु पुर्वणीक देवाना यज्ञियामरमतिं ववृत्याः ॥३॥

हे देवताहरू हो ! नमस्कार गर्ने स्तोताले यज्ञको महिमा बढाउँछन्। श्रेष्ठ यज्ञका उपासक होता सर्वोत्तम मानिन्छन्। हे परम तेजस्वी अग्निदेव ! तिमी प्रदीप्त भएर देवताहरूको यजन उत्तम प्रकारले गर।

यदा वीरस्य रेवतो दुरोणे स्योनशीरतिथिराचिकेतत्।
सुप्रीतो अग्निः सुधितो दम आ स विशे दाति वार्यमियत्यै ॥४॥

धनवान् वीरका घरमा जुन बेला आदरणीय अग्निदेव सुखपूर्वक प्रतिष्ठित भएर प्रदीप्त हुन्छन्, त्यस बेला नजिकै रहेका याजकलाई श्रेष्ठ धन प्राप्त हुन्छ।

इमं नो अग्ने अध्वरं जुषस्व मरुत्स्विन्द्रे यशसं कृधी नः।
आ नक्ता बर्हिः सदतामुषासोशन्ता मित्रावरुणा यजेह ॥५॥

हे अग्निदेव ! तिमी हाम्रो यज्ञ सेवन गर। मरुत्हरू र इन्द्रदेवका बीचमा हामीलाई यशस्वी बनाऊ। यस यज्ञमा मित्रावरुणको यजन गर। रात र उषा कालमा कुशका आसनमा बस।

एवाग्निं सहस्यं१ वसिष्ठो रायस्कामो विश्वप्स्न्यस्य स्तौत्।
इषं रयिं पप्रथद्वाजमस्मे यूयं पात स्वस्तिभिः सदा नः ॥६॥
ऐश्वर्यको आशा गर्ने वसिष्ठले सबै किसिमका धनका लागि बलका पुत्र अग्निदेवको स्तुति गरे। अग्निदेवले हामीलाई अन्न, बल र धन प्रदान गरुन्। हे देवताहरू हो ! हाम्रो पालन र कल्याण गर।

[सूक्त - ४३]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - विश्वदेवा छन्द - त्रिष्टुप्।

प्र वो यज्ञेषु देवयन्तो अर्चन्द्यावा नमोभिः पृथिवी इषध्यै।
येषां ब्रह्माण्यसमानि विप्रा विष्वग्वियन्ति वनिनो न शाखाः ॥१॥
विद्वान् स्तोताको स्तोत्र वृक्षको शाखाझैं सबै दिशामा गमन गर्दछ। ती स्तोता देवत्व प्राप्तिका लागि नमस्कारसहित द्यावापृथिवीलाई स्तुति गर्दछन्।

प्र यज्ञ एतु हेत्वो न सप्तिरुद्यच्छध्वं समनसो घृताचीः।
स्तृणीत बर्हिरध्वराय साधूर्ध्वा शोचींषि देवयून्यस्थुः ॥२॥
हाम्रो यज्ञ तीव्रगामी अश्वजस्तै भएर देवतातिर गमन गरोस्। समान मन भएका तिमीहरू घिउ अर्पण गर्ने सुरो उचाल। यज्ञमा देवताका लागि कुशा ओछ्याओ। हे अग्निदेव ! देवतातिर जाने तिम्रो ज्वाला माथितिर उचालियोस्।

आ पुत्रासो न मातरं विभृत्राः सानौ देवासो बर्हिषः सदन्तु।
आ विश्वाची विदथ्यामनक्त्वग्ने मा नो देवताता मृधस्कः ॥३॥
भरणपोषण गर्न योग्य बालक माताका काखमा बसेझैं देवताहरू कुशका आसनमा विराजमान होऊन्। हे अग्निदेव ! तिम्रा ज्वालामा जुहूले घिउको सेचन गरुन्। हे अग्नि देवता ! तिमी युद्धमा हाम्रा शत्रुलाई परास्त गर।

ते सीषपन्त जोषमा यजत्रा ऋतस्य धाराः सुदुघा दुहानाः।
ज्येष्ठं वो अद्य मह आ वसूनामा गन्तन समनसो यति ष्ठ ॥४॥
यजनका योग्य देवताले जल वर्षा गराउँदै हाम्रो सेवा स्वीकार गरुन्। हे देवताहरू हो ! तिमीहरू सबै समान मनले हाम्रा यज्ञमा आओ र आज श्रेष्ठ धन प्रदान गर।

एवा नो अग्ने विक्ष्वा दशस्य त्वया वयं सहसावन्नास्क्राः।
राया युजा सधमादो अरिष्टा यूयं पात स्वस्तिभिः सदा नः ॥५॥
हे अग्निदेव ! तिमी प्रजाहरूमा हामीलाई नै धन प्रदान गर। हे बलवान् अग्निदेव ! हामी सधैं तिम्रो आश्रयमा रहेर धनवान्, स्वस्थ र अहिंसक वृत्तिका बनौं। तिमी हाम्रो पालन र कल्याण गर।

[सूक्त - ४४]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - दधिक्रा लिङ्गोक्तदेवता। छन्द - त्रिष्टुप् जगती।

दधिक्रां वः प्रथममश्विनोषसमग्निं समिद्धं भगमूतये हुवे।
इन्द्रं विष्णुं पूषणं ब्रह्मणस्पतिमादित्यान्द्यावापृथिवी अपः स्वः ॥१॥
तिमीहरूको सुरक्षाका लागि हामी सबैभन्दा पहिले दधिक्रादेवको आह्वान गर्दछौं। त्यसपछि दुवै अश्विनीकुमार, उषा, समिद्ध, अग्नि र भगदेवलाई आह्वान गर्दछौं। इन्द्र, पूषा, ब्रह्मणस्पति, आदित्यगण, द्यावापृथिवी, जलदेवता र सूर्यदेवको स्तुति गर्दछौं।

दधिक्रामु नमसा बोधयन्त उदीराणा यज्ञमुपप्रयन्तः।
इळां देवीं बर्हिषि सादयन्तोऽश्विना विप्रा सुहवा हुवेम ॥२॥
हामी दधिक्रादेवलाई नमस्कार र पुकारा गर्दै जगाएर यज्ञका नजिकै ल्याउँछौं। यज्ञमा इडादेवीलाई प्रतिष्ठित गरेर श्रेष्ठ, प्रार्थनीय विद्वान् अश्विनीकुमारको आह्वान गर्दछौं।

दधिक्रावाणं बुबुधानो अग्निमुप ब्रुव उषसं सूर्यं गाम्।
ब्रध्नं मँश्चतोर्वरुणस्य बभ्रुं ते विश्वास्मद् दुरिता यावयन्तु ॥३॥
हामी दधिक्रादेवलाई सम्बोधन गर्दै अग्नि, उषा, सूर्य र भूमि अथवा गाईको स्तुति गर्दछौं। अहङ्कारी शत्रुका संहारक वरुणदेवका खैरा रङ्गका अश्वको स्तुति गर्दछौं। यी सबै देवताहरूले हामीलाई सबै खालका पापबाट बचाऊन्।

दधिक्रावा प्रथमो वाज्यर्वाग्रे रथानां भवति प्रजानन्।
सविदान उषसा सूर्येणादित्येभिर्वसुभिरङ्गिरोभिः ॥४॥

सर्वप्रधान, तीव्रगामी दधिक्रा मनको विचार जानेर उषा, आदित्यगण, वसुगण र अङ्गिरा एवं सूर्यदेवसित सहमत भएर स्वयं नै रथका अघिल्लो भागमा जुट्दछन्।

आ नो दधिक्राः पथ्यामनक्त्वृतस्य पन्थामन्वेतवा उ।
शृणोतु नो दैव्यं शर्धो अग्निः शृण्वन्तु विश्वे महिषा अमूराः ॥५॥

यजन मार्गबाट जानका लागि दधिक्रादेव हाम्रो मार्ग जलले सेचन गरुन्। दिव्य रूप भएका अग्निदेव र समस्त बलवान् विद्वान्हरू सबैले हाम्रो प्रार्थना सुनून्।

[सूक्त - ४५]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - सविता। छन्द - त्रिष्टुप्।

आ देवो यातु सविता सुरत्नोन्तरिक्षप्रा वहमानो अश्वैः।
हस्ते दधानो नर्या पुरूणि निवेशयञ्च प्रसुवञ्च भूम ॥१॥

जुन देवताले उत्तम धन धारण गर्दछन्, आफ्ना तेजले अन्तरिक्षलाई प्रकाशित गर्दछन् र हरियो वर्णका अश्वले जसको रथ तान्दछन्, ती सवितादेव हाम्रा यज्ञमा आऊन्। सवितादेव मानिसका हितसाधक हुन् र हातमा धन धारण गर्दछन्। यी देवताले प्राणीलाई धारण गरेका छन् र तिनलाई कर्ममा प्रेरित गर्दछन्।

उदस्य बाहू शिथिरा बृहन्ता हिरण्यया दिवो अन्ताँ अनष्टाम्।
नूनं सो अस्य महिमा पनिष्ट सूरश्चिदस्मा अनु दादपस्याम् ॥२॥

यी सुनौलो हात भएका, दानशील सवितादेव द्युलोकका अन्त्यसम्म नै व्याप्त छन्। यी देवताको यस्तो महिमा हामी बयान गर्दछौँ। यी सवितादेवले मानिसलाई शुभ कर्म गर्ने प्रेरणा प्रदान गरुन्।

स घा नो देवः सविता सहावा साविषद्वसुपतिर्वसूनि।
विश्रयमाणो अमतिमुरूची मर्तभोजनमध रासते नः ॥३॥

धनका स्वामी, तेजस्वी सवितादेवले हामीलाई धन प्रदान गरुन्। अति विशाल स्वरूप भएका ती देवताले हामीलाई मानवसुहाउँदो भोग्य सामग्री र धन प्रदान गरुन्।

इमा गिरः सवितारं सुजिह्वं पूर्णगभस्तिमीडते सुपाणिम्।
चित्रं वयो बृहदस्मे दधातु यूयं पात स्वस्तिभिः सदा नः ॥४॥

उत्तम जिब्रो हुने, समस्त धनले सम्पन्न, उत्तम किरणरूपी हात भएका सवितादेवलाई हामी यसै स्तोत्रले स्तुति गर्दछौँ।

[सूक्त - ४६]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - रुद्र। छन्द - जगती त्रिष्टुप्।

इमा रुद्राय स्थिरधन्वने गिरः क्षिप्रेषवे देवाय स्वधाव्ने।
अषाळ्हाय सहमानाय वेधसे तिग्मायुधाय भरता शृणोतु नः ॥१॥

सुदृढ धनुषधारी, शीघ्रगामी बाण चलाउने, अजेय, तीक्ष्ण अस्त्रधारी र अन्नले पूर्ण रुद्रदेवलाई हाम्रा स्तोत्रले सन्तुष्ट गर्दछ, उनले सुनून्।

स हि क्षयेण क्षम्यस्य जन्मनः साम्राज्येन दिव्यस्य चेतति।
अवन्नवन्तीरुप नो दुरश्चरानमीवो रुद्र जासु नो भव ॥२॥

हे रुद्रदेव ! तिमीलाई भौतिक र दिव्य विभूतिका रूपमा चिन्ने गरिन्छ। तिमी सबैलाई सुखी र सम्पन्न बनाउँदै हामीलाई निरोगी बनाएर हाम्रा घरमा निवास गर।

या ते दिद्युदवसृष्टा दिवस्परि क्ष्मया चरति परि सा वृणक्तु नः।
सहस्रं ते स्वपिवात भेषजा मा नस्तोकेषु तनयेषु रीरिषः ॥३॥

हे वायुसमान विचरण गर्ने रुद्रदेव ! तिमीद्वारा संचरित अन्तरिक्षीय विद्युत्ले हामीलाई कष्ट नदियोस्। तिम्रा सहस्र औषधिले हाम्रा बालबच्चालाई ख्याउटे बन्न नदिऊन्।

मा नो वधी रुद्र मा परा दा मा ते भूम प्रसितौ हीडितस्य।
आ नो भज बर्हिषी जीवशंसे यूयं पात स्वस्तिभिः सदा नः ॥४॥

हे रुद्रदेव ! हामीलाई नमार र हाम्रो त्याग पनि नगर। तिम्रा क्रोधका बन्धनले हामीलाई नगाँजोस्। प्राणीले प्रशंसा गर्ने कार्यमा हामीलाई सहभागी बनाऊ। कल्याणकारी साधनले हाम्रो रक्षा गर।

[सूक्त - ४७]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - आपः। छन्द - त्रिष्टुप्।

आपो यं वः प्रथमं देवयन्त इन्द्रपानमूर्मिमकृण्वतेडः।
तं वो वयं शुचिमरिप्रमद्य घृतप्रुषं मधुमन्तं वनेम ॥१॥

हे जलदेव ! देवत्व चाहनेहरू इन्द्रदेवले पिउनका लागि भूमिमा प्रवाहित जल मिसाएर सोमरस तयार गर्दछन्। शुद्ध, पापरहित, मधुर रसयुक्त सोम हामी पनि पान गर्दछौं।

तमूर्मिमापो मधुमत्तमं वोऽपां नपादवत्वाशुहेमा।
यस्मिन्निन्द्रो वसुभिर्मादयाते तमश्याम देवयन्तो वो अद्य ॥२॥

हे जलदेवता ! तिम्रो मिठो जलप्रवाह सोमरसमा मिसिएको छ। त्यसलाई शीघ्रगामी अपांनपात् अग्निदेवले सुरक्षित राखून्। त्यही सोम पान गरेर वसुहरूसँगै इन्द्रदेव मत्त हुन्छन्। हामी देवत्वको आशा गर्नेहरू आज त्यो प्राप्त गर्दछौं।

शतपवित्राः स्वधया मदन्तीर्देवीर्देवानामपि यन्ति पाथः।
ता इन्द्रस्य न मिनन्ति व्रतानि सिन्धुभ्यो हव्यं घृतवज्जुहोत ॥३॥

जलदेवता अनेक किसिमले पवित्र गराउँदै सन्तुष्टि र प्रसन्नता प्रदान गर्दछन्। उनी यज्ञमा आए पनि विघ्न पार्दैनन्। त्यसैले नदीको निरन्तर प्रवाहका लागि यज्ञ गरौं।

या सूर्यो रश्मिभिराततान याभ्य इन्द्रो अरदद् गातुमूर्मिम्।
ते सिन्धवो वरिवो धातना नो यूयं पात स्वस्तिभिः सदा नः ॥४॥

सूर्यदेवले आफ्ना रश्मिद्वारा जल बढाउँछन् र इन्द्रदेवले त्यसलाई प्रवाहित हुने मार्ग दिन्छन्। हे सिन्धु ! तिमी तिनै जलका धाराले हामीलाई धनधान्यले समृद्ध गराऊ र कल्याणप्रद साधनले हाम्रो रक्षा गर।

[सूक्त - ४८]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - ऋभुगण विश्वेदेवा। छन्द - त्रिष्टुप्।

ऋभुक्षणो वाजा मादयध्वमस्मे नरो मघवानः सुतस्य।
आ वोऽर्वाचः क्रतवो न यातां विभ्वो रथं नर्यं वर्तयन्तु ॥१॥

हे कर्मकुशल धनवान् ऋभुहरू हो ! हाम्रा सोमरसले तिमी प्रसन्न होओ। तिमीहरूको कर्मकुशल र समर्थ अश्वले मानिसका लागि हितकर मार्ग प्रशस्त गरोस्।

ऋभुर्ऋभुभिरभि वः स्याम विभ्वो विभुभिः शवसा शवांसि।
वाजो अस्माँ अवतु वाजसाताविन्द्रेण युजा तरुषेम वृत्रम् ॥२॥

तिमीहरूसित रहँदा हामी कर्मकुशल, ऐश्वर्यवान् र बलवान् हुन्छौं। वाज नामका ऋभुदेव युद्धमा रक्षा गर्दछन्। इन्द्रदेवको सहयोग प्राप्त गरेर हामी वृत्रबाट जोगिन्छौं।

ते चिद्धि पूर्वीरभि सन्ति शासा विश्वाँ अर्य उपरताति वन्वन्।
इन्द्रो विभ्वाँ ऋभुक्षा वाजो अर्यः शत्रोर्मिथत्या कृणवन्वि नृम्णम् ॥३॥

उनले वीर शत्रुको ठूलो सेनालाई उत्तम अस्त्रशस्त्रले युद्धभूमिमा पराजित गर्दछन्। ऐश्वर्यवान् श्रेष्ठ शिल्पी विश्वकर्मा आदिबाट सेवा गरिने, बलवान् शत्रु पराजित गर्ने महान् इन्द्र र ऋभुदेव शत्रुको विनाश गर्दछन्।

नू देवासो वरिवः कर्तना नो भूत नो विश्वेऽवसे सजोषाः।
समस्मे इषं वसवो ददीरन् यूयं पात स्वस्तिभिः सदा नः ॥४॥

हे देवताहरू हो ! हामीलाई धन प्रदान गर र एकै विचार भएका सबै ऋभुहरूले हाम्रो सुरक्षा गर। हामीलाई अन्न प्रदान गरेर कल्याणकारी साधनले सुरक्षित गर।

[सूक्त - ४९]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - आपः। **छन्द** - त्रिष्टुप्।

**समुद्रज्येष्ठाः सलिलस्य मध्यात्पुनाना यन्त्यनिविशमानाः।**
**इन्द्रो या वज्री वृषभो रराद ता आपो देवीरिह मामवन्तु ॥१॥**

जलको सबैभन्दा ज्येष्ठ रूप समुद्र हो। जलप्रवाह सधैं अन्तरिक्षबाट आउँछ। इन्द्रदेवले जसको मार्ग खुला गराए, ती जलदेवताले यहाँ हाम्रो रक्षा गरुन्।

**या आपो दिव्या उत वा स्रवन्ति खनित्रिमा उत वा याः स्वयञ्जाः।**
**समुद्रार्था याः शुचयः पावकास्ता आपो देवीरिह मामवन्तु ॥२॥**

दिव्य जल आकाशबाट प्राप्त हुन्छ, त्यो सधैं नदीमा जान्छ। त्यसलाई खनेर निकालिन्छ र स्वय स्रोतका रूपमा प्रवाहित भएर पवित्रता छर्दै समुद्रतिर जान्छ। त्यस दिव्यतायुक्त पवित्र जलले हाम्रो रक्षा गरोस्।

**यासां राजा वरुणो याति मध्ये सत्यानृते अवपश्यञ्जनानाम्।**
**मधुश्चुतः शुचयो याः पावकास्ता आपो देवीरिह मामवन्तु ॥३॥**

सर्वत्र व्याप्त भएर सत्य र असत्यको साक्षी बनेका वरुणदेव जलका स्वामी हुन्। तिनै रसले पूर्ण, दीप्तिले पूर्ण, शोधन सामर्थ्यले पूर्ण जलरूपी देवीहरूले हाम्रो रक्षा गरुन्।

**यासु राजा वरुणो यासु सोमो विश्वे देवा यासूर्जं मदन्ति।**
**वैश्वानरो यास्वग्निः प्रविष्टस्ता आपो देवीरिह मामवन्तु ॥४॥**

राजा वरुण र सोम जलमा निवास गर्दछन्, जलमा विद्यमान सबै देवताहरू अन्नले आनन्दित हुन्छन्, विश्वव्यापी अग्निदेव त्यहाँ निवास गर्छन्, उनै दिव्य जलदेवले हाम्रो रक्षा गरुन्।

[सूक्त - ५०]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - अग्नि विश्वेदेवा गङ्गा। **छन्द** - अतिजगति।

**आ मां मित्रावरुणेह रक्षतं कुलाययद् विश्वयन्मा न आ गन्।**
**अजकावं दुर्दृशीकं तिरो दधे मा मां पद्येन रपसा विदत्त्सरुः ॥१॥**

हे मित्रावरुण ! तिमीहरू यस संसारमा हाम्रो रक्षा गर। एकै ठाउँमा लाग्ने कुलायत वा जतातर्तै फैलिने विश्वयत विष हाम्रा नजिक नआऊन्। पशुका रूपमा रहेका वा कठिनाइले देखिने अजकायले छद्म रूपले रहने सर्प आदिले आघात गर्नका लागि हाम्रा पाइलाको आवाज चिन्न नसकून् र तिनीहरू हामीदेखि टाढै रहून्।

**यद्विजामन्परुषि वन्दनं भुवदष्ठीवन्तौ परि कुल्फौ च देहत्।**
**अग्निष्टच्छोचन्नप बाधतामितो मा मां पद्येन रपसा विदत्त्सरुः ॥२॥**

हे अग्निदेव ! वन्दन नामको जोर्नीमा लाग्ने विषले घुँडा र खुट्टाका ग्रन्थिहरू सुन्याइदिन्छ। हामी सबैदेखि त्यो विष टाढै राख। हाम्रा पाइलाका चालले छद्मगामी सर्पले हामीलाई नचिनून्।

**यच्छल्मलौ भवति यन्नदीषु यदोषधीभ्यः परि जायते विषम्।**
**विश्वे देवा निरितस्तत्सुवन्तु मा मां पद्येन रपसा विदत्त्सरुः ॥३॥**

हे विश्वेदेवताहरू हो ! शाल्मली वृक्षमा हुने विष, नदीको पानी र खालीनालीमा उत्पन्न हुने विषलाई परै राख। लुकेर हिँड्ने सर्पहरूबाट हाम्रो रक्षा गर।

**याः प्रवतो निवत उद्वत उदन्वतीरनुदकाश्च याः। ता अस्मभ्यं पयसा**
**पिन्वमानाः शिवा देवीरशिपदा भवन्तु सर्वा नद्यो अशिमिदा भवन्तु ॥४॥**

नदीहरू आफ्नो प्रवाहमान दिशामा बगिरहेका छन्, तिनीहरू अग्लोबाट होचोतिर बग्दै छन्। जो पानीविनाका भएका छन् वा जो भरिएर संसारलाई सन्तुष्ट गराउँदै छन्, ती सबै नदी शिपद रोगबाट बचाउने कल्याणकारी होऊन्। सबै नदीले हाम्रो रक्षा गरुन्।

[सूक्त - ५१]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - आदित्यगण। **छन्द** - त्रिष्टुप्।

**आदित्यानामवसा नूतनेन सक्षीमहि शर्मणा शन्तमेन।**
**अनागास्त्वे अदितित्वे तुरास इमं यज्ञं दधतु श्रोषमाणाः ॥१॥**

हे आदित्य ! तिम्रा कृपाले हामीलाई नयाँ र सधैं सुख दिने घर प्राप्त होस्। हाम्रो प्रार्थना सुनेर यज्ञ र यजमानलाई पाप र दरिद्रताबाट मुक्त गराऊ।

आदित्यासो अदितिर्मादयन्तां मित्रो अर्यमा वरुणो रजिष्ठाः ।
अस्माकं सन्तु भुवनस्य गोपाः पिबन्तु सोममवसे नो अद्य ॥२॥

हे वेगवान् आदित्य, अदिति, वरुण, अर्यमा र मित्रदेव ! तिमीहरू समस्त विश्वका रक्षक हौ । प्रसन्न रहेर हाम्रो हित साधनका लागि सोमपान गर ।

आदित्या विश्वे मरुतश्च विश्वे देवाश्च विश्व ऋभवश्च विश्वे ।
इन्द्रो अग्निरश्विना तुष्टुवाना यूयं पात स्वस्तिभिः सदा नः ॥३॥

हामीले देवगण, मरुत्‌गण, आदित्यगण, ऋभुगण, अश्विनीकुमार, अग्निदेव र इन्द्रको प्रार्थना गरेका छौं । कल्याणकारी साधनले उनीहरूले सधैं हाम्रो रक्षा गरुन् ।

[सूक्त - ५२]

ऋषि - वसिष्ठ मैत्रावरुणि । देवता - आदित्यगण । छन्द - त्रिष्टुप् ।

आदित्यासो अदितयः स्याम पूर्देवत्रा वसवो मर्त्यत्रा ।
सनेम मित्रावरुणा सनन्तो भवेम द्यावापृथिवी भवन्तः ॥१॥

हे आदित्यहरू हो ! हामी तिमीहरूका आफन्त हौं, दुःखबाट मुक्त राख । हे वसु हो ! देवताको शक्तिले सबै मानवको कल्याण होस् । हे मित्रावरुण ! तिमीहरूका यजनले हामी धन प्राप्त गरौं । हे द्यावापृथिवी ! हामी शक्तिशाली होऔं ।

मित्रस्तन्नो वरुणो मामहन्त शर्म तोकाय तनयाय गोपाः ।
मा वो भुजेमान्यजातमेनो मा तत्कर्म वसवो यच्चयध्वे ॥२॥

मित्र र वरुण आदि देवताले हामीलाई उत्तम ऐश्वर्य प्रदान गरुन् र हाम्रा सन्तानलाई पनि सुख प्रदान गरुन् । हामी तिमीहरूका आत्मीय बनौं, अर्काका पापको फल नभोगौं । हे वसुदेवहरू हो ! जुन कारणले तिमीहरू विनाश गर्दछौ, त्यस्तो कर्म हामी नगरौं ।

तुरण्यवोऽङ्गिरसो नक्षन्त रत्नं देवस्य सवितुरियानाः ।
पिता च तन्नो महान् यजत्रो विश्वे देवाः समनसो जुषन्त ॥३॥

चाँडो गतिमा काम गर्ने अङ्गिराले सवितादेवको उपासना गरेर प्राप्त गरेको दिव्य धन र ऐश्वर्य प्रजापति तथा देवगणले हामीलाई प्रदान गरुन् ।

[सूक्त - ५३]

ऋषि - वसिष्ठ मैत्रावरुणि । देवता - द्यावा-पृथिवी । छन्द - त्रिष्टुप् ।

प्र द्यावा यज्ञैः पृथिवी नमोभिः सबाध ईडे बृहती यजत्रे ।
ते चिद्धि पूर्वे कवयो गृणन्तः पुरो मही दधिरे देवपुत्रे ॥१॥

विशाल देवजननी द्यावापृथ्वीलाई उहिले ऋषिहरूले स्तुति गरेका थिए । हामी यज्ञ र अन्नद्वारा कष्ट हटाइदिन उनीहरूलाई प्रार्थना गर्दछौं ।

प्र पूर्वजे पितरा नव्यसीभिर्गीर्भिः कृणुध्वं सदने ऋतस्य ।
आ नो द्यावापृथिवी दैव्येन जनेन यातं महि वां वरूथम् ॥२॥

हे याजकहरू हो ! मातापितारूपी द्यावापृथिवीलाई यज्ञका अघिल्ला भागमा स्थापित गरेर नवीन स्तोत्रले उचित पूजा गर । हे द्यावापृथिवी ! देवतासँगै दिव्य ऐश्वर्य प्रदान गर्नका लागि तिमीहरू हामीकहाँ आओ ।

उतो हि वां रत्नधेयानि सन्ति पुरूणि द्यावापृथिवी सुदासे ।
अस्मे धत्तं यदसदस्कृधोयु यूयं पात स्वस्तिभिः सदा नः ॥३॥

हे द्यावापृथिवी ! तिमीहरूसित अनेकौं किसिमका दिव्य, रमणीय र अक्षय धन छन्, ती हामीलाई प्रदान गरेर कल्याणका साथ हाम्रो पालन गर ।

[सूक्त - ५४]

ऋषि - वसिष्ठ मैत्रावरुणि । देवता - वास्तोष्पति । छन्द - त्रिष्टुप् ।

वास्तोष्पते प्रति जानीह्यस्मान्त्स्वावेशो अनमीवो भव नः ।
यत्त्वेमहे प्रति तन्नो जुषस्व शं नो भव द्विपदे शं चतुष्पदे ॥१॥

हे वास्तुपति देवता ! हामीलाई जगाऊ । हाम्रा पुत्रपौत्रादि दुई खुट्टे र गाई, अश्व आदि चार खुट्टेलाई निरोगी तथा सुखी गराऊ । तिमीसित हामीले मागेको धन प्रदान गर ।

वास्तोष्पते प्रतरणो न एधि गयस्फानो गोभिरश्वेभिरिन्दो।
अजरासस्ते सख्ये स्याम पितेव पुत्रान्प्रति नो जुषस्व ॥२॥

हे वास्तुपति देवता ! हाम्रा लागि तिमी कल्याणकारी धन विस्तार गर। हे सोम ! तिम्रा कृपाले हामी गाई र घोडासँग निरोगी रहौँ। हामीलाई पुत्रभैँ पालन गर।

वास्तोष्पते शग्मया संसदा ते सक्षीमहि रण्वया गातुमत्या।
पाहि क्षेम उत योगे वरं नो यूयं पात स्वस्तिभिः सदा नः ॥३॥

हे वास्तुपति देवता ! हामी सुखदायी, रमणीय र ऐश्वर्यसम्पन्न स्थान प्राप्त गरौँ। प्राप्त भएका र प्राप्त हुनुपर्ने हाम्रा श्रेष्ठ धनको रक्षा गर। हामीलाई कल्याणकारी साधनले सधैँ सुरक्षित राख।

[सूक्त - ५५]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - वास्तोष्पति। छन्द - गायत्री बृहती अनुष्टुप्।

अमीवहा वास्तोष्पते विश्वा रूपाण्याविशन्। सखा सुशेव एधि नः ॥१॥

हे वास्तुपति देवता ! तिमी हाम्रा लागि सबै किसिमले मित्र हौ। हाम्रा सबै खालका रोग नाश गर।

यदर्जुन सारमेय दतः पिशङ्ग यच्छसे।
वीव भ्राजन्त ऋष्टय उप स्रक्वेषु बप्सतो नि षु स्वप ॥२॥

देवलोकका सरमा नामका सेता कुकुरका वंशज वा पहेँलो वर्णका हे वास्तुपति देवता ! तिमीले देखाउने दाँत शस्त्रजस्तै चम्कन्छन्। आहारका समयमा अझै विशेष शोभायुक्त हुन्छन्। त्यस्ता दाँत भएका तिमी देवता सुखले सुत।

स्तेनं राय सारमेय तस्करं वा पुनःसर।
स्तोतॄनिन्द्रस्य रायसि किमस्मान्दुच्छुनायसे नि षु स्वप ॥३॥

हे सरमाका पुत्र तिमी चोरतस्करहरूका नजिक बारम्बार जाऊ। इन्द्रदेवका भक्तका नजिक किन जान्छौ ? हाम्रा काममा किन बाधा हाल्छौ ? तिमी राम्ररी सुत।

त्वं सूकरस्य दर्दृहि तव दर्दर्तु सूकरः।
स्तोतॄनिन्द्रस्य रायसि किमस्मान्दुच्छुनायसे नि षु स्वप ॥४॥

तिमी सुँगुरलाई तर्साऊ, सुँगुरले तिमीलाई तर्साओस्। इन्द्रका भक्ततिर किन कुद्छौ ? हामीलाई दुःख नदेऊ, गएर सुत।

सस्तु माता सस्तु पिता सस्तु श्वा सस्तु विश्पतिः।
ससन्तु सर्वे ज्ञातयः सस्त्वयमभितो जनः ॥५॥

तिम्रा आमाबाबु सुतून्, स्वयं तिमी सुत। गृहस्वामी, बन्धुबान्धव र नोकरचाकर सुतून्।

य आस्ते यश्च चरति यश्च पश्यति नो जनः।
तेषां सं हन्मो अक्षाणि यथेदं हर्म्यं तथा ॥६॥

यहाँ रहेर आवतजावत गर्दै हामीतिर हेर्नेका दृष्टि हामी राजमहलजस्तै अटल बनाऔँ।

सहस्रशृङ्गो वृषभो यः समुद्रादुदाचरत्।
तेना सहस्येना वयं नि जनान्त्स्वापयामसि ॥७॥

हजारौँ सिङ भएको साँढेजस्ता सूर्य समुद्रबाट माथि उठेर आए। शत्रु पराजित गर्ने ती सूर्य आफ्ना बलले सबैलाई सुखको शयन गराउँछन्।

प्रोष्ठेशया वह्येशया नारीर्यास्तल्पशीवरीः।
स्त्रियो याः पुण्यगन्धास्ताः सर्वाः स्वापयामसि ॥८॥

कुनै नारी आँगनमा सुत्छन्, कुनै बाटो हिँड्दै वाहनमा सुत्छन्, कुनै ओछ्यानमा सुत्छन्, कुनै उत्तम सुगन्धयुक्त भएर शय्यामा सुत्दछन्। ती सबै स्त्रीलाई सुखपूर्वक सुत्ने व्यवस्था हामी गर्दछौँ।

[सूक्त - ५६]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मरुद्गण। छन्द - त्रिष्टुप् द्विपदा विराट्।

क ईं व्यक्ता नरः सनीडा रुद्रस्य मर्या अधा स्वश्वाः ॥१॥

एकै घरमा बस्ने, कान्तियुक्त, उत्तम घोडायुक्त, सबैका हितैषि रुद्रदेव को हुन् ?

नकिर्ह्येषां जनूंषि वेद ते अङ्ग विद्रे मिथो जनित्रम् ॥२॥
यिनी आफ्ना जन्मका विषयमा स्वयं जान्दछन्, अर्को कसैले जान्दैन।

अभि स्वपूभिर्मिथो वपन्त वातस्वनसः श्येना अस्पृध्रन् ॥३॥
दिव्य साधन लिएर यिनीहरू भेट हुँदा श्येन पक्षीजस्तै आपसमा प्रतिस्पर्धा गर्दछन्।

एतानि धीरो निण्या चिकेत पृश्निर्यदूधो मही जभार ॥४॥
बुद्धिमान् मानिसहरूले सेतो वर्णका मरुत्हरूलाई चिन्दछन्। मरुत्की माताले यिनलाई अन्तरिक्षमा वा आफ्ना पेटमा धारण गरिराखेकी थिइन्।

सा विट् सुवीरा मरुद्भिरस्तु सनात्सहन्ती पुष्यन्ती नृम्णम् ॥५॥
वीर मरुत्का कारण उनी मानवी शक्ति बढाउँदै शत्रु विनाशिनी वीर पुत्रवती हुन्।

यामं येष्ठाः शुभा शोभिष्ठाः श्रिया सम्मिश्ला ओजोभिरुग्राः ॥६॥
वीर मरुत्हरू आवश्यकता पर्दा प्राणघातक आक्रमण गर्दछन्। श्रेष्ठ अलङ्कारले युक्त र तेजस्वी छन्।

उग्रं व ओजः स्थिरा शवांस्यधा मरुद्भिर्गणस्तुविष्मान् ॥७॥
हे बुद्धिमान् मरुत्हरू हो ! तिमीहरूकै कारण सङ्गठन बलियो भयो। तिमीहरूको बल स्थिर र तेज उग्र छ।

शुभ्रो वः शुष्मः क्रुध्मी मनांसि धुनिर्मुनिरिव शर्धस्य धृष्णोः ॥८॥
हे शोभायमान बल भएका मरुत्गण ! तिमीहरूका मनले शत्रुको रिस क्रोध गर्दछ र तिमीहरूको अर्कालाई नियन्त्रण गर्ने वेगले वृक्ष आदि कम्पित र शब्दायमान गराउँछ। त्यो शब्द मुनिहरू स्तोत्रपाठ गर्दा शब्दोच्चारण गरेजस्तै हुन्छ।

सनेम्यस्मद्युयोत दिद्युं मा वो दुर्मतिरिह प्रणङ्नः ॥९॥
हे मरुत् हो ! तिमीहरूका शत्रुविनाशक क्रूर चिन्तनले हाम्रो अहित नहोस्। हामीलाई श्रेष्ठ शक्ति देऊ। तिमीहरूका तेजस्वी शस्त्रले हामीमाथि घात नहोस्।

प्रिया वो नाम हुवे तुराणामा यत्तृपन्मरुतो वावशानाः ॥१०॥
हे वीर मरुत्हरू हो ! तिमीहरू वेगपूर्वक कार्य गर्दछौ। हामी प्रिय वाणीले तिमीहरूको श्रेष्ठ नाम पुकार्दछौं, त्यसबाट प्रसन्न होओ।

स्वायुधास इष्मिणः सुनिष्का उत स्वयं तन्वः शुम्भमानाः ॥११॥
गतिमान्, श्रेष्ठ वीर मरुत्हरू अस्त्रशस्त्र र आभूषण धारण गरेर अत्यन्त सुशोभित छन्।

शुची वो हव्या मरुतः शुचीनां शुचिं हिनोम्यध्वरं शुचिभ्यः।
ऋतेन सत्यमृतसाप आयञ्छुचिजन्मानः शुचयः पावकाः ॥१२॥
हे पवित्र अन्नले पोषित र पवित्र जीवनका वीर मरुत्हरू हो ! तिमीहरूका लागि हामी हिंसारहित यज्ञ गर्दछौं, किनभने तिमीहरू सत्यका व्यवहारले सत्यमय जीवन बाँचेर अरूलाई पनि श्रेष्ठ बनाउँछौ।

अंसेष्वा मरुतः खादयो वो वक्षःसु रुक्मा उपशिश्रियाणाः।
वि विद्युतो न वृष्टिभी रुचाना अनु स्वधामायुधैर्यच्छमानाः ॥१३॥
हे मरुत् वीर हो ! तिमीहरूको काँध आभूषणले र वक्ष सुनका हारले सुशोभित छ। वर्षा समयमा तिमीहरू बिजुलीजस्तै चम्किला अस्त्र वर्षा गरेर आफ्नो कल्याणकारी स्वधा शक्तिको परिचय दिन्छौ। वर्षाका समयमा बिजुलीले शोभा पाएझैं आयुधको वर्षा गरेर तिमीहरू आफ्ना स्वधा शक्तिले परिचित हुन्छौ।

प्र बुध्न्या व ईरते महांसि प्र नामानि प्रयज्यवस्तिरध्वम्।
सहस्रियं दम्यं भागमेतं गृहमेधीयं मरुतो जुषध्वम् ॥१४॥
हे पूज्य मरुत्हरू हो ! तिमीहरूको प्रखर तेज अन्तरिक्षमा प्रवाहित रहन्छ। तिमीहरू जलको वर्षा गर। हजारौं गृहस्वामीले प्रदान गरेका यज्ञको भाग ग्रहण गर।

**यदि स्तुतस्य मरुतो अधीथेत्था विप्रस्य वाजिनो हवीमन्।**
**मक्षू रायः सुवीर्यस्य दात नू चिद्यमन्य आदभदरावा ॥१५॥**

हे मरुत् वीर हो ! तेजस्वी, ज्ञानी मानिसले यज्ञमा गरेका स्तुति राम्ररी जान्दछौ भने श्रेष्ठ पुत्रयुक्त धन हामीलाई प्रदान गर। त्यो धन शत्रुले कहिल्यै नष्ट नगरोस्।

**अत्यासो न ये मरुतः स्वञ्चो यक्षदृशो न शुभयन्त मर्याः।**
**ते हर्म्येष्ठाः शिशवो न शुभ्रा वत्सासो न प्रक्रीडिनः पयोधाः ॥१६॥**

तीव्रगामी अश्वजस्तै निरन्तर गमनशील मरुत्‌गण यज्ञदर्शकजस्तै पवित्र मन भएका, राजकुमारजस्तै सुन्दर र खेल्ने शिशुजस्तै छन्। यिनीहरू जलका धारक हुन्।

**दशस्यन्तो नो मरुतो मृडन्तु वरिवस्यन्तो रोदसी सुमेके।**
**आरे गोहा नृहा वधो वो अस्तु सुम्नेभिरस्मे वसवो नमध्वम् ॥१७**

शत्रु संहार गरेर द्युलोक र पृथिवीलोकलाई संरक्षण दिने मरुत्‌हरूले हामीलाई सुखी बनाऊन्। उनीहरूका गाई र मानिसलाई घात गर्ने शस्त्र हामीतिर नआऊन्। हामीलाई सुखका साधन प्रदान गरुन्।

**आ वो होता जोहवीति सत्तः सत्राचीं रातिं मरुतो गृणानः।**
**य ईवतो वृषणो अस्ति गोपाः सो अद्वयावी हवते व उक्थैः ॥१८॥**

हे वीर मरुत्‌हरू हो ! यज्ञशालामा बसेका याजकहरू तिमीहरूका दानवीरताको प्रशंसा गरेर बारम्बार आह्वान गर्दछन्। हे वर्षणशील ! जुन याजक कर्मनिष्ठ एवं यजमानका संरक्षक हुन्, उनीहरू मायामोहबाट मुक्त भएर स्तुति गर्दछन्।

**इमे तुरं मरुतो रामयन्तीमे सहः सहस आ नमन्ति।**
**इमे शंसं वनुष्यतो नि पान्ति गुरु द्वेषो अररुषे दधन्ति ॥१९॥**

मरुत्‌हरू बिजुलीका गतिमा काम गर्ने यजमानसित प्रसन्न हुन्छन्। आफ्ना पराक्रमले अरू बलवान्‌लाई झुकाउँछन्। स्तोतालाई हिंस्रकबाट जोगाउँछन् र यज्ञ नगर्नेसित अत्यधिक रिसाउँछन्।

**इमे रध्रं चिन्मरुतो जुनन्ति भृमिं चिद्यथा वसवो जुषन्त।**
**अप बाधध्वं वृषणस्तमांसि धत्त विश्वं तनयं तोकमस्मे ॥२०॥**

मरुत्‌हरू धनी र दरिद्र दुवैलाई समान रूपले संरक्षण प्रदान गर्दछन्। मनोकामना पूर्ति गर्ने हे वीर हो ! हामीलाई अन्धकारबाट हटाएर पुत्रपौत्रादिसहित सुख प्रदान गर।

**मा वो दात्रान्मरुतो निरराम मा पश्चाद्दघ्म रथ्यो विभागे।**
**आ नः स्पार्हे भजतना वसव्ये३ यदीं सुजातं वृषणो वो अस्ति ॥२१॥**

हे रथमा चढेका मरुत्‌हरू हो ! सम्पत्ति दान गर्दाखेरि तिमीहरू हामीलाई अलग नगर। आफ्नो दिव्य सम्पत्तिमा हामीलाई पनि भागीदार बनाओ।

**सं यद्धनन्त मन्युभिर्जनासः शूरा यह्वीष्वोषधीषु विक्षु।**
**अध स्मा नो मरुतो रुद्रियासस्त्रातारो भूत पृतनास्वर्यः ॥२२॥**

हे रुद्रपुत्र मरुत्‌हरू हो ! पराक्रमी योद्धाले उत्साहित भएर नदी, औषधि, खेत र प्रजामा शत्रुको जस्तै क्रोधले आक्रमण गर्ने सङ्ग्राममा हामीलाई संरक्षण प्रदान गर।

**भूरि चक्र मरुतः पित्र्याण्युक्थानि या वः शस्यन्ते पुरा चित्।**
**मरुद्भिरुग्रः पृतनासु साळ्हा मरुद्भिरित्सनिता वाजमर्वा ॥२३॥**

हे मरुत्‌हरू हो ! हाम्रा पूर्वजका लागि अनेकौँ कार्य गरेका छौ। पहिले पनि तिमीहरूले अनेकौँ प्रशंसनीय कार्य गरेका छौ। ओजस्वी व्यक्ति तिमीहरूको सहयोग पाएर शत्रुजयी हुन्छ। तिमीहरूका कृपाले स्तोताले अन्न आदि प्राप्त गर्दछन्।

**अस्मे वीरो मरुतः शुष्म्यस्तु जनानां यो असुरो विधर्ता।**
**अपो येन सुक्षितये तरेमाध स्वमोको अभि वः स्याम ॥२४॥**

हे मरुत्‌हरू हो ! हामीलाई बलवान्, बुद्धिमान् र शत्रु विनाश गर्ने सन्तति प्राप्त होस्। त्यसका सहायताले हामी शत्रुको विनाश गर्न सकौँ र तिमीहरूका कृपाले आफ्नो अभीष्ट स्थानमा प्रतिष्ठित हुन सकौँ।

तत्र इन्द्रो वरुणो मित्रो अग्निराप ओषधीर्वनिनो जुषन्त।
शर्मन्त्स्याम मरुतामुपस्थे यूयं पात स्वस्तिभिः सदा नः ॥२५॥
इन्द्र, वरुण, मित्र, अग्नि, जल, औषधि र वृक्षदेवले प्रार्थना स्वीकार गरून्। मरुत्का छत्रछायामा हामी सुखी रहौं। उनले हामीलाई कल्याणकारी साधनले सुरक्षित राखून्।

[सूक्त - ५७]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मरुद्‌गण। छन्द - त्रिष्टुप्।

मध्वो वो नाम मारुतं यजत्राः प्र यज्ञेषु शवसा मदन्ति।
ये रेजयन्ति रोदसी चिदुर्वी पिन्वन्त्युत्सं यदयासुरुग्राः ॥१॥
हे यजनीय मरुत्‌हरू हो ! तिमीहरूका सुन्दर नामको स्तोताहरू प्रार्थना गर्दछन्। तिमीहरू पृथ्वी र अन्तरिक्ष कम्पायमान गर्दै सर्वत्र गमन गर्छौ। तिमीहरूका कृपाले सर्वत्र जलको वर्षा हुन्छ।

निचेतारो हि मरुतो गृणन्तं प्रणेतारो यजमानस्य मन्म।
अस्माकमद्य विदथेषु बर्हिरा वीतये सदत पिप्रियाणाः ॥२॥
हे मरुत्‌हरू हो ! आफ्ना भक्तहरूमाथि प्रसन्न भएर, उनीहरूका मनको इच्छा पूरा गराओ। हामीसँग प्रसन्न भएर यज्ञशालामा कुशका आसनमा बस र सोम पान गर।

नैतावदन्ये मरुतो यथेमे भ्राजन्ते रुक्मैरायुधैस्तनूभिः।
आ रोदसी विश्वपिशः पिशानाः समानमञ्ज्यञ्जते शुभे कम् ॥३॥
मरुत्‌हरू जति उदार मनका अरू कोही छैनन्। यी वीरहरू आभूषण, वस्त्र र आयुधले आफ्नो तेज प्रदीप्त गराउँछन्। आकाश र पृथिवीलाई सुशोभित गराउँछन्।

ऋधक्सा वो मरुतो दिद्युदस्तु यद्व आगः पुरुषता कराम।
मा वस्तस्यामपि भूमा यजत्रा अस्मे वो अस्तु सुमतिश्चनिष्ठा ॥४॥
हे पूज्य वीरहरू हो ! हामीबाट कुनै गल्ती भए क्षमा गर। हामी तिमीहरूका रिसमा नपरौं। हामीलाई तिमीहरू अन्न दान गर्ने बुद्धि प्रदान गर।

कृते चिदत्र मरुतो रणन्तानवद्यासः शुचयः पावकाः।
प्र णोऽवत सुमतिभिर्यजत्राः प्र वाजेभिस्तिरत पुष्यसे नः ॥५॥
हे अनिन्दनीय पवित्र मरुत्‌हरू हो ! हाम्रा यज्ञशालामा विचरण गर। हे पूज्य वीर हो ! तिमीहरूको असल बुद्धि हाम्रा कल्याणमा लागिरहोस्। हामी तिमीहरूको स्तुति सुन्दर रूपमा गर्दछौं। हामीलाई अन्न दान गरेर पोषण प्रदान गर।

उत स्तुतासो मरुतो व्यन्तु विश्वेभिर्नामभिर्नरो हवींषि।
ददात नो अमृतस्य प्रजायै जिगृत रायः सूनृता मघानि ॥६॥
नेतृत्व प्रदान गर्ने मरुत्‌हरू अनेकौं नामबाट प्रशंसित भएर हामीबाट हाम्रा सन्तान र प्रजालाई अमृत दान गराऊन्। याजकलाई सन्मार्गबाट महान् धन प्राप्त गराऊन्।

आ स्तुतासो मरुतो विश्व ऊती अच्छा सूरीन्त्सर्वताता जिगात।
ये नस्त्मना शतिनो वर्धयन्ति यूयं पात स्वस्तिभिः सदा नः ॥७॥
हे प्रशंसनीय मरुत्‌हरू हो ! सर्वत्र व्याप्त यज्ञमा ज्ञानीहरूका सम्मुख होओ। स्तोतालाई कल्याण गर। तिमीहरू स्वयं नै यजमानलाई सन्तान आदिले परिपूर्ण बनाइदिन्छौ। कल्याणकारी साधनले हामीलाई सुरक्षा प्रदान गरून्।

[सूक्त - ५८]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मरुद्‌गण। छन्द - त्रिष्टुप्।

प्र साकमुक्षे अर्चता गणाय यो दैव्यस्य धाम्नस्तुविष्मान्।
उत क्षोदन्ति रोदसी महित्वा नक्षन्ते नाकं निर्ऋतेरवंशात् ॥१॥
हे स्तोताहरू हो ! तिमीहरू देवस्थानमा निवास गर्ने मरुत्‌हरूको पूजा गर। तिनैले आफ्ना दिव्य प्रभावले विनाशकारी आपद्‌बाट जोगाउँछन् र पृथिवी तथा अन्तरिक्षमा स्वर्गीय परिस्थिति बनाउँछन्।

जनूश्चिद्वो मरुतस्त्वेष्येण भीमासस्तुविमन्यवोऽयासः ।
प्र ये महोभिरोजसोत सन्ति विश्वो वो यामन्भयते स्वर्दृक् ॥२॥

हे विकराल रूप भएका मरुतहरू हो ! तिमीहरूको जन्म रुद्रदेवबाट भएको छ। तिमीहरूको क्रन्द र तेज सबै दिशामा व्याप्त छ। तिमीहरू प्रवाहित हुँदा सूर्यदेवमाथि दृष्टि गर्ने पुरा संसार भयभीत हुन्छ।

बृहद्वयो मघवद्भ्यो दधात जुजोषन्निन्मरुतः सुष्टुतिं नः ।
गतो नाध्वा वि तिराति जन्तुं प्र णः स्पार्हाभिरूतिभिस्तिरेत ॥३॥

हे मरुतहरू हो ! यज्ञ गर्नेलाई धनधान्यले परिपूर्ण गर। हाम्रो स्तुतिले प्रसन्न होओ। तिमीहरू जाने मार्गको अनुसरण गर्नाले प्राणी समुदायको विनाश हुँदैन। हामीलाई मन परेको ऐश्वर्य तिमीहरू प्रदान गर।

युष्मोतो विप्रो मरुतः शतस्वी युष्मोतो अर्वा सहुरिः सहस्री ।
युष्मोतः सम्राळुत हन्ति वृत्रं प्र तद्वो अस्तु धूतयो देष्णम् ॥४॥

हे मरुत् वीर हो ! तिमीहरूले रक्षा गरेको विद्वान् स्तोता असङ्ख्य धनको स्वामी हुन्छ। तिमीहरूबाट संरक्षित फुर्तिलो अश्व शत्रुमाथि विजय पाउने हुन्छ। तिमीहरूबाट संरक्षित भएर राजाले पनि शत्रु विनाश गर्दछन्। तिमीहरूले दिएको धन बढिरहोस्।

ताँ आ रुद्रस्य मीढ्हुषो विवासे कुविन्नंसन्ते मरुतः पुनर्नः ।
यत्सस्वर्ता जिहीळिरे यदाविरव तदेन ईमहे तुराणाम् ॥५॥

मन परेको ऐश्वर्य प्रदान गर्ने रुद्रपुत्र मरुतहरूको उपासना हामी गर्दछौं। बारम्बार हामीलाई उनीहरूको संरक्षण प्राप्त हुन्छ। शीघ्रता वा जानी नजानीकन भएको पाप हामी तिमीहरूको प्रार्थना गरेर पखाल्छौं।

प्र सा वाचि सुष्टुतिर्मघोनामिदं सूक्तं मरुतो जुषन्त ।
आराच्चिद्द्वेषो वृषणो युयोत यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

हामी ऐश्वर्यशाली मरुतहरूको स्तुति गर्दछौं। उनीहरू हाम्रा प्रार्थनाले प्रसन्न होऊन्। हाम्रा शत्रु परैबाट भगाइदिऊन्। हामीलाई सधैं श्रेष्ठ साधनले सुरक्षित राखून्।

[सूक्त - ५९]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मरुद्गण रुद्र। छन्द - प्रगाथ त्रिष्टुप् गायत्री।

यं त्रायध्व इदमिदं देवासो यं च नयथ ।
तस्मा अग्ने वरुण मित्रार्यमन्मरुतः शर्म यच्छत ॥१॥

हे अग्नि, वरुण, मित्र, अर्यमा र मरुत्‌देव हो ! जसलाई श्रेष्ठ मार्गमा लैजान्छौ, उसलाई सुख पनि प्रदान गर। तिमीहरू आफ्ना उपासकलाई भयबाट मुक्त गराओ।

युष्माकं देवा अवसाहनि प्रिय ईजानस्तरति द्विषः ।
प्र स क्षयं तिरते वि महीरिषो यो वो वराय दाशति ॥२॥

हे देवताहरू हो ! तिमीहरूबाट संरक्षित भएर शुभ दिनमा यज्ञ गर्नेले शत्रु पराजित गर्दछ। धेरै द्रव्य प्रदान गर्नेले अनेकौं किसिमले आफ्नो उन्नति गर्दछ।

नहि वश्चरमं चन वसिष्ठः परिमंसते ।
अस्माकमद्य मरुतः सुते सचा विश्वे पिबत कामिनः ॥३॥

हे मरुतहरू हो ! तिमीहरूमध्येका कनिष्ठको पनि वसिष्ठ ऋषिले स्तुति गर्दछन्। आज हाम्रा यस यज्ञमा सँगसँगै बसेर तिमीहरू सबैले सोमरस पान गर।

नहि व ऊतिः पृतनासु मर्धति यस्मा अराध्वं नरः ।
अभि व आवर्त्सुमतिर्नवीयसी तूयं यात पिपीषवः ॥४॥

हे नेतृत्व क्षमताले सम्पन्न मरुत् हो ! तिमीहरूबाट संरक्षित व्यक्ति युद्धमा रक्षण साधनले सुरक्षित रहन्छ। तिमीहरूका नयाँनौला संरक्षण हामीलाई प्राप्त होऊन्। इच्छा गरेअनुसार सोम पान गर्नका लागि तिमीहरू हामीकहाँ आओ।

ओ षु घृष्विराधसो यातनान्धांसि पीतये।
इमा वो हव्या मरुतो ररे हि कं मो ष्वऽन्यत्र गन्तन ॥५॥

हे मरुत् हो ! तिमीहरूको शक्ति सङ्गठित छ। हव्य ग्रहण गर्नका लागि तिमीहरू यहाँ आओ, अन्यत्र कतै नजाओ।

आ च नो बर्हिः सदताविता च नः स्पार्हाणि दातवे वसु।
अस्रेधन्तो मरुतः सोम्ये मधौ स्वाहेह मादयाध्वै ॥६॥

तिमीहरू हामीले ओछ्याएका कुशका आसनमा विराजमान होओ र मन लागेको जति सम्पत्ति प्रदान गर। कसैलाई कष्ट नदिने हे वीरहरू हो ! यस यज्ञमा तिमीहरू आफ्ना भागको सोमरसरूपी आहुतिको भाग स्वीकार गरेर आनन्दित होओ।

सस्वश्चिद्धि तन्वः शुम्भमाना आ हंसासो नीलपृष्ठा अपप्तन्।
विश्वं शर्धो अभितो मा नि षेद नरो न रण्वाः सवने मदन्तः ॥७॥

अज्ञात रूपले रहने मरुत्हरू नीलो वर्णका हाँसझैं अलङ्कारले सजिएर सोमपान गर्दै आनन्दित हुन्छन्। रमणीय पुरुषजस्तै यी मरुत्हरू हाम्रा चारैतिर बसिदिऊन्।

यो नो मरुतो अभि दुर्हृणायुस्तिरश्चित्तानि वसवो जिघांसति।
द्रुहः पाशान्प्रति स मुचीष्ट तपिष्ठेन हन्मना हन्तना तम् ॥८॥

हे वीर मरुत्हरू हो ! अशिष्ट, तिरस्कृत व्यवहार गर्ने व्यक्तिले हाम्रो मन दुःखी बनाउँछ वा पापसित द्रोह गर्ने वरुणका पाशमा हामीलाई बाँध्न चाहन्छ भने त्यस्ता व्यक्तिलाई आफ्ना धारिला हतियारले नष्ट गरिदेओ।

सान्तपना इदं हविर्मरुतस्तज्जुजुष्टन। युष्माकोती रिशादसः ॥९॥

शत्रुलाई सताएर नाश गर्ने हे वीर मरुत्हरू हो ! तिमीहरू यो हव्य ग्रहण गरेर हामीलाई संरक्षण प्रदान गर।

गृहमेधास आ गत मरुतो माप भूतन। युष्माकोती सुदानवः ॥१०॥

गृहस्थी धर्मको पालन गर्ने, दानवीर हे मरुत्हरू हो ! तिमीहरू आफ्ना रक्षा साधनका साथै यहाँ आओ तर हामीदेखि पर नजाओ।

इहेह वः स्वतवसः कवयः सूर्यत्वचः। यज्ञं मरुत आ वृणे ॥११॥

सूर्यजस्तै तेजस्वी, स्वयं प्रवृद्ध बलयुक्त ज्ञानी मरुत्हरू हो ! यज्ञमा हामी तिमीहरूलाई आह्वान गर्दछौं।

त्र्यम्बकं यजामहे सुगन्धिं पुष्टिवर्धनम्।
उर्वारुकमिव बन्धनान्मृत्योर्मुक्षीय मामृतात् ॥१२॥

हामी सुगन्धित पुण्य, कीर्ति र पुष्टिवर्द्धक र तीन किसिमले संरक्षण प्रदान गर्ने तीन भगवान्को उपासना गर्दछौं। रुद्रदेवले हामीलाई काँक्रोखरबुजो आदि उर्वारुक फलले झैं मृत्युको बन्धनबाट मुक्त गरून् र अमरताको सूत्रदेखि पर नपुऱ्याऊन्।

[सूक्त - ६०]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मित्रावरुण, १ सूर्य। छन्द - त्रिष्टुप्।

यदद्य सूर्य ब्रवोऽनागा उद्यन्मित्राय वरुणाय सत्यम्।
वयं देवत्रादिते स्याम तव प्रियासो अर्यमन् गृणन्तः ॥१॥

हे सूर्यदेव ! आज उदाउँदाखेरि अनुष्ठानका समयमा हामीलाई निष्पाप बनाइदेऊ। हे आदित्य ! हामी मित्रावरुण देवताका प्रिय पात्र होऔं। हे अर्यमा ! हामी तिम्रा कृपाको प्रिय पात्र बनौं। हे अर्यमा ! तिम्रो कृपा पाउनका लागि हामी प्रार्थना गर्दछौं।

एष स्य मित्रावरुणा नृचक्षा उभे उदेति सूर्यो अभि ज्मन्।
विश्वस्य स्थातुर्जगतश्च गोपा ऋजु मर्तेषु वृजिना च पश्यन् ॥२॥

हे मित्र र वरुण देवताहरू हो ! सूर्यदेव पृथिवी र अन्तरिक्षमा उदाएपछि सबैको पोषण गर्दै मानिसका असल र खराब कर्म हेर्दछन्।

अयुक्त सप्त हरितः सधस्थाद्या ईं वहन्ति सूर्यं घृताचीः ।
धामानि मित्रावरुणा युवाकुः सं यो यूथेव जनिमानि चष्टे ॥३॥

हे मित्रावरुण देवताहरू हो ! जल प्रदान गर्ने, हरणशील, सात घोडाले सूर्यको रथ चलाउँछन्। सूर्यदेव तिमीहरू दुवैलाई सन्तुष्ट गराएर गाई पालन गरेझैं प्राणी जगत्को पालन गर्दछन्।

उद्वां पृक्षासो मधुमन्तो अस्थुरा सूर्यो अरुहच्छुक्रमर्णः ।
यस्मा आदित्या अध्वनो रदन्ति मित्रो अर्यमा वरुणः सजोषाः ॥४॥

हे मित्रावरुण देवताहरू हो ! पवित्र हव्य आदि अन्न तिमीलाई समर्पित छ। मित्र, वरुण र अर्यमा देवले बनाएका मार्गबाट सूर्य भगवान् अन्तरिक्षमा गमन गर्दछन्।

इमे चेतारो अनृतस्य भूरेर्मित्रो अर्यमा वरुणो हि सन्ति।
इम ऋतस्य वावृधुर्दुरोणे शग्मासः पुत्रा अदितेरदब्धाः ॥५॥

आदित्य, मित्र, वरुण, अर्यमा आदि देवताहरू पापनाशक र सर्वत्र मङ्गल गर्ने खालका छन्। कसैसित नडराउने अदितिपुत्रहरू सुख प्रदान गर्दै यज्ञले उन्नति गर्दछन्।

इमे मित्रो वरुणो दूडभासोऽचेतसं चिच्चितयन्ति दक्षैः ।
अपि क्रतुं सुचेतसं वतन्तस्तिरश्चिदंहः सुपथा नयन्ति ॥६॥

मित्र, वरुण र अर्यमादेवलाई कसैले दमन गर्न सक्दैन। यिनीहरू मूर्खलाई ज्ञानवान् बनाउँछन्। बुद्धिमान्, कर्मनिष्ठ व्यक्तिलाई अगाडि बढाउँदै पापीलाई दण्ड दिन्छन्।

इमे दिवो अनिमिषा पृथिव्याश्चिकित्वांसो अचेतसं नयन्ति।
प्रव्राजे चिन्नद्यो गाधमस्ति पारं नो अस्य विष्पितस्य पर्षन् ॥७॥

यिनी आकाश र पृथ्वीलोकका सबै कुराको जानकार छन् र अज्ञानीलाई ज्ञानवान् बनाएर श्रेष्ठ कर्ममा लगाउँछन्। यिनका प्रबल सामर्थ्यले गहिरा नदीमा कडा आधार प्राप्त हुन्छ। यस्ता देवताले हामीलाई कर्मबाट पार लगाऊन्।

यद् गोपावददितिः शर्म भद्रं मित्रो यच्छन्ति वरुणः सुदासे।
तस्मिन्ना तोकं तनयं दधाना मा कर्म देवहेडनं तुरासः ॥८॥

मित्र, अर्यमा र वरुणदेव याजकलाई कल्याणकारी र स्तुत्य सुख प्रदान गर्दछन्। त्यही सुख हाम्रा सन्तानलाई प्राप्त होस्। शीघ्रतापूर्वक कार्य गर्दा हामीले कुनै भुल नगरौं।

अव वेदिं होत्राभिर्यजेत रिपः काश्चिद्वरुणध्रुतः सः ।
परि द्वेषोभिरर्यमा वृणक्तूरुं सुदासे वृषणा उ लोकम् ॥९॥

यज्ञका वेदीमा बसेर देवताको प्रार्थना नगर्नेलाई वरुणदेवले मार्छन्। मित्रावरुणदेवले श्रेष्ठ दान गर्नेहरूलाई सद्गति प्रदान गरुन् र राक्षसबाट जोगाऊन्।

सस्वश्चिद्धि समृतिस्त्वेष्येषामपीच्येन सहसा सहन्ते।
युष्मद्भिया वृषणो रेजमाना दक्षस्य चिन्महिना मृळता नः ॥१०॥

यी वीरको मेल गूढ र तेजस्वी भएको बताइन्छ। यी गुप्त बलले शत्रु पराजित गराउँदै डर देखाएर कँपाइदिन्छन्। यस्ता देवताले त्यही बलले हामीलाई सुखी बनाऊन्।

यो ब्रह्मणे सुमतिमायजाते वाजस्य सातौ परमस्य रायः ।
सीक्षन्त मन्युं मघवानो अर्य उरु क्षयाय चक्रिरे सुधातु ॥११॥

जुन यजमान अन्नधन दान गर्दाखेरि श्रेष्ठ स्तुति गर्दछ, उसलाई मित्र आदि देवताहरूले ध्यानपूर्वक सुन्दछन् र स्तोतालाई विशाल आवास प्रदान गर्दछन्।

इयं देव पुरोहितिर्युवभ्यां यज्ञेषु मित्रावरुणावकारि।
विश्वानि दुर्गा पिपृतं तिरो नो यूयं पात स्वस्तिभिः सदा नः ॥१२॥

हे मित्रावरुण देवताहरू हो ! यी उपासना, यज्ञ आदि कर्म तिमीलाई प्रसन्न गर्नका लागि हुन्। तिमीहरू सबै आपद्‌बाट बचाएर असल साधनले हाम्रो पालन गर।

[सूक्त - ६१]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मित्रावरुण। छन्द - त्रिष्टुप्।

उद्वां चक्षुर्वरुण सुप्रतीकं देवयोरेति सूर्यस्ततन्वान्।
अभि यो विश्वा भुवनानि चष्टे स मन्युं मर्त्येष्वा चिकेत॥१॥

हे तेजस्वी मित्रावरुण देवताहरू हो ! तिमीहरू देवताका आँखारूपी सूर्यदेवको जस्तै सुन्दर प्रकाश फैलाउँदै आकाशमा गमन गर्दछौ र सारा भुवन हेर्दै मानिसको कर्म तथा मनोभाव बुभ्दछौ।

प्रवां स मित्रावरुणावृतावा विप्रो मन्मानि दीर्घश्रुदियर्ति।
यस्य ब्रह्माणि सुक्रतू अवाथ आ यत्क्रत्वा न शरदः पृणैथे॥२॥

हे मित्रावरुणहरू हो ! सत्यनिष्ठ र धेरै ज्ञानले सम्पन्न यज्ञकर्ता वसिष्ठ तिम्रो स्तोत्र पाठ गर्दछन्। ती ब्राह्मणको तिमीहरू दुवैले रक्षा गर्दछौ। तिमीहरू अनन्त कालसम्म ती उत्तम कर्म गर्ने वसिष्ठको सुरक्षा गर।

प्रोरोर्मित्रावरुणा पृथिव्याः प्र दिव ऋष्वाद्बृहतः सुदानू।
स्पशो दधाथे ओषधीषु विक्ष्वृधग्यतो अनिमिषं रक्षमाणा॥३॥

हे मित्रावरुण हो ! तिमीहरूले द्युलोकका साथै अति विशाल पृथिवीको पनि परिक्रमा गरेका छौ। हे उत्तम दान दिनेहरू हो ! वनस्पति र प्रजाहरूमा तिमीहरूको सौन्दर्य भल्किएको छ। यज्ञ गर्नेहरूलाई तिमीहरू विशेष सुरक्षा प्रदान गर्दछौ।

शंसा मित्रस्य वरुणस्य धाम शुष्मो रोदसी बद्बधे महित्वा।
अयन्मासा अयज्वनामवीराः प्र यज्ञमन्मा वृजनं तिराते॥४॥

हे ऋषि ! तिमी तेजस्वी मित्रावरुणदेवको स्तुति गर। उनीहरू आफ्ना पराक्रमले द्युलोक र पृथिवीलोकलाई सन्तुलित राख्छन्। यज्ञविनाको मानिस सम्मानरहित होस् र यज्ञ गर्नेहरूले बलबुद्धि बढाऊन्।

अमूरा विश्वा वृषणाविमा वां न यासु चित्रं ददृशे न यक्षम्।
द्रुहः सचन्ते अनृता जनानां न वां निण्यान्यचिते अभूवन्॥५॥

हे प्राज्ञदेवहरू हो ! तिमीहरूलाई स्तुति गरेका छौं, यसमा अतिशयोक्ति केही छैन। भुटो प्रशंसा गर्ने जनद्रोही हुन्छन्। त्यसैले यी स्तोत्र भ्रममा पार्ने खालका छैनन्।

समु वां यज्ञं महयं नमोभिर्हुवे वां मित्रावरुणा सबाधः।
प्र वां मन्मान्यृचसे नवानि कृतानि ब्रह्म जुजुषन्निमानि॥६॥

हे मित्रावरुणहरू हो ! तिमीहरूको यज्ञ स्तुतिसँगै सम्पन्न गर्दछौं। हामी बाधाग्रस्त हुनाले तिमीहरूलाई बोलाउँछौं। तिमीहरूको प्रसन्नताका लागि नयाँ स्तोत्र पाठ गर्दछौं।

इयं देव पुरोहितिर्युवभ्यां यज्ञेषु मित्रावरुणावकारि।
विश्वानि दुर्गा पिपृतं तिरो नो यूयं पात स्वस्तिभिः सदा नः॥७॥

हे देवताहरू हो ! यज्ञमा गरिएको यो उपासना तिमीहरू दुईका लागि हो। हामीलाई सबै खालका आपद्बाट मुक्त गर। सधैं कल्याणकारी साधनले हाम्रो रक्षा गर।

[सूक्त - ६२]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - सूर्य मित्रावरुण। छन्द - त्रिष्टुप्।

उत्सूर्यो बृहदर्चींष्यश्रेत्पुरु विश्वा जनिम मानुषाणाम्।
समो दिवा ददृशे रोचमानः क्रत्वा कृतः सुकृतः कर्तृभिर्भूत्॥१॥

सूर्यदेव माथितिर उकालिएर प्रशस्त तेजसम्पन्न हुँदै सबैका आश्रयदाता बन्दछन्। दिउँसो प्रकाशित हुँदा सबैले उस्तै देख्छौं। यज्ञकर्ताले पुज्ने यी सूर्यदेव सबैका निर्माता हुन्। यिनलाई परमात्मा स्वयंले बनाएका हुन्।

स सूर्य प्रति पुरो न उद् गा एभिः स्तोमेभिरेतशेभिरेवैः।
प्र नो मित्राय वरुणाय वोचोऽनागसो अर्यम्णे अग्नये च॥२॥

हे सूर्यदेव ! हाम्रा स्तोत्रले प्रसन्न भएर, गमनशील अश्वमा आरुढ भएर आकाशमार्गबाट गमन गर। मित्र, वरुण, अर्यमा र अग्निदेवलाई हाम्रो निर्दोष भावना जनाइदेऊ।

वि नः सहस्रं शुरुधो रदन्त्वृतावानो वरुणो मित्रो अग्निः।
यच्छन्तु चन्द्रा उपमं नो अर्कमा नः कामं पूपुरन्तु स्तवानाः ॥३॥

सम्पूर्ण मानिसलाई दुःखबाट मुक्त गराउने, सत्यको अनुशासनमा रहेका मित्र, वरुण र अग्निदेवले हामीलाई सबै किसिमका आनन्ददायक र प्रशंसनीय धन प्रदान गरुन्। प्रार्थनाले प्रसन्न भएर उनले हाम्रो मनोकामना पूर्ण गरुन्।

द्यावाभूमी अदिते त्रासीथां नो ये वां जज्ञुः सुजनिमान ऋष्वे।
मा हेडे भूम वरुणस्य वायोर्मा मित्रस्य प्रियतमस्य नृणाम् ॥४॥

हे विशाल द्यावापृथिवी र अदिति ! हामीलाई संरक्षण प्रदान गर। उत्तम जन्म भएका, तिमीलाई चिनेका, हामीलाई वायु, वरुण र श्रेष्ठ मानवका क्रोधबाट बचाओ।

प्र बाहवा सिसृतं जीवसे न आ नो गव्यूतिमुक्षतं घृतेन।
आ नो जने श्रवयतं युवाना श्रुतं मे मित्रावरुणा हवेमा ॥५॥

हे चिरयुवा मित्रावरुणदेवताहरू हो ! तिमी हाम्रो प्रार्थनाले प्रसन्न भएर, बाहाँ खोलेर, उदारतापूर्वक हामीलाई दीर्घजीवन प्रदान गर। हामीले जान योग्य क्षेत्रमा घिउले सेचन गर। हामीलाई ख्याति प्रदान गर र हाम्रो आह्वान सुन।

नू मित्रो वरुणो अर्यमा नस्त्मने तोकाय वरिवो दधन्तु।
सुगा नो विश्वा सुपथानि सन्तु यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

हे मित्र, वरुण र अर्यमादेव हो ! हामी र हाम्रा सन्तानलाई पवित्र धन प्रदान गर। हाम्रो प्रगतिका सबै बाटा निर्बाध होऊन्। हामीलाई कल्याणकारी साधनले सुरक्षित राख।

[सूक्त - ६३]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - सूर्य मित्रावरुण। छन्द - त्रिष्टुप्।

उद्वेति सुभगो विश्वचक्षाः साधारणः सूर्यो मानुषाणाम्।
चक्षुर्मित्रस्य वरुणस्य देवश्चर्मेव यः समविव्यक् तमांसि ॥१॥

मित्रावरुणका आँखाजस्तै सुन्दर भाग्य भएका, समद्रष्टा सूर्यदेव छालाजस्तो अन्धकार पन्छाएर उदाउँदै छन्।

उद्वेति प्रसवीता जनानां महान् केतुरर्णवः सूर्यस्य।
समानं चक्रं पर्याविवृत्सन्यदेतशो वहति धूर्षु युक्तः ॥२॥

मानवजगत्का सृष्टिकर्ता, सबैका ज्ञानदाता र जीवन प्रदाता सूर्यदेव सबैको समयचक्र बदल्ने विचारले उदाएर हरियो वर्णका अश्व नारिएका रथमा आउँछन्।

विभ्राजमान उषसामुपस्थाद् रेभैरुदेत्यनुमद्यमानः।
एष मे देवः सविता चच्छन्द यः समानं न प्रमिनाति धाम ॥३॥

अत्यन्त प्रकाशमान सूर्यदेव आफ्ना भक्तको स्तुति सुन्दै उषाका बीचमा उदाउँछन्। यिनले हाम्रो मनोकामना पूरा गर्दछन् र आफ्ना तेजलाई कहिल्यै घट्न दिँदैनन्।

दिवो रुक्म उरुचक्षा उदेति दूरेअर्थस्तरणिर्भ्राजमानः।
नूनं जनाः सूर्येण प्रसूता अयन्नर्थानि कृणवन्नपांसि ॥४॥

विशेष तेजस्वी सूर्यदेव टाढै विराजमान भए पनि द्युलोकको शोभा बढाउँदै उदाउँछन्। निश्चित नै सूर्यदेवका प्रेरणाले सबैजना काममा प्रवृत्त हुन्छन्।

यत्रा चक्रुरमृता गातुमस्मै श्येनो न दीयन्नन्वेति पाथः।
प्रति वां सूर उदिते विधेम नमोभिर्मित्रावरुणोत हव्यैः ॥५॥

देवताहरूले सूर्यदेवका लागि मार्ग बनाएका छन्, त्यस मार्गबाट श्येन पक्षीझैं उनी अन्तरिक्षमा जान्छन्। हे मित्रावरुण ! सूर्योदय हुँदा यज्ञ र स्तोत्रले हामी यजन गर्दछौं।

नू मित्रो वरुणो अर्यमा नस्त्मने तोकाय वरिवो दधन्तु।
सुगा नो विश्वा सुपथानि सन्तु यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

हे मित्र, वरुण र अर्यमादेव हो ! हामी र हाम्रा सन्तानलाई पवित्र धन प्रदान गर। हाम्रो प्रगतिका बाटाहरू निर्बाध होऊन्। हामीलाई कल्याणकारी साधनले सुरक्षित राख।

[सूक्त - ६४]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मित्रावरुण। छन्द - त्रिष्टुप्।

दिवि क्षयन्ता रजसः पृथिव्यां प्र वां घृतस्य निर्णिजो ददीरन्।
हव्यं नो मित्रो अर्यमा सुजातो राजा सुक्षत्रो वरुणो जुषन्त ॥१॥

हे मित्रावरुणदेव ! तिमीहरू द्यावापृथिवीमा जल सञ्चार गर्दछौ। मित्र, सुजन्मा अर्यमा र बलवान् राजा वरुणले हाम्रो यो हव्य सेवन गरुन्।

आ राजाना मह ऋतस्य गोपा सिन्धुपति क्षत्रिया यातमर्वाक्।
इळां नो मित्रावरुणोत वृष्टिमव दिव इन्वतं जीरदानू ॥२॥

हे मित्र र वरुणदेव हो ! तिमी सत्यरूपी यज्ञका रक्षक, नदीमा जल सञ्चार गराउने र वीरताले रक्षा गर्ने क्षत्रिय हौ। हाम्रा लागि अन्तरिक्षबाट जल प्रेसित गर।

मित्रस्तन्नो वरुणो देवो अर्यः प्र साधिष्ठेभिः पथिभिर्नयन्तु।
ब्रवद्यथा न आदरिः सुदास इषा मदेम सह देवगोपाः ॥३॥

मित्र, वरुण, अर्यमा आदि देवगणले दातासित हाम्रो कुरो गरुन्। साधनसम्पन्न मार्गबाट हामीलाई त्यहाँ पुऱ्याऊन्। उनै देवताका कृपाले पुत्रपौत्रादि र हामी अन्नले पोषित हौं।

यो वां गर्तं मनसा तक्षदेतमूर्ध्वां धीतिं कृणवद्धारयच्च।
उक्षेथां मित्रावरुणा घृतेन ता राजाना सुक्षितीस्तर्पयेथाम् ॥४॥

हे मित्रावरुणदेव हो ! उच्च धारणशक्ति भएका व्यक्तिले अति मन लगाएर तिमीहरूको रथ निर्माण गर्दछन्। हे राजाहरू हो ! तिमीहरूका कृपाले उसलाई राम्रो निवास प्राप्त होस्। उसलाई जलले सिञ्चित गरेर सन्तुष्ट गराओ।

एष स्तोमो वरुण मित्र तुभ्यं सोमः शुक्रो न वायवेऽयामि।
अविष्टं धियो जिगृतं पुरन्धीर्यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

मित्र, वरुण र वायुका लागि हामीले सोमरसजस्तै आनन्दप्रदायक स्तुति गरेका छौं। उनले हाम्रो बुद्धि र कर्म संरक्षित गरुन्। हाम्रो ज्ञानशक्ति जागृत गरुन् र कल्याणकारी साधनले कल्याण गरुन्।

[सूक्त - ६५]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मित्रावरुण। छन्द - त्रिष्टुप्।

प्रति वां सूर उदिते सूक्तैर्मित्रं हुवे वरुणं पूतदक्षम्।
ययोरसुर्य१ मक्षितं ज्येष्ठं विश्वस्य यामन्नाचिता जिगत्नु ॥१॥

कहिल्यै नष्ट नहुने सूर्यको श्रेष्ठ बल प्राप्त गर्ने व्यक्ति सर्वत्र विजयी हुन्छ। सूर्यदेव उदाउँदा पवित्र बल भएका वरुण र मित्रदेवलाई सूक्तहरूले हामी प्रार्थना गर्दछौं।

ता हि देवानामसुरा तावर्या ता नः क्षितीः करतमूर्जयन्तीः।
अश्याम मित्रावरुणा वयं वां द्यावा च यत्र पीपयन्नहा च ॥२॥

हे बलशाली मित्रावरुणहरू हो ! हाम्रा सन्तानलाई उन्नति गराओ भनेर हामी प्रार्थना गर्दछौं। हामी तिमीहरूको सर्वत्र यशोगान गर्दछौं।

ता भूरिपाशावनृतस्य सेतू दुरत्येतू रिपवे मर्त्याय।
ऋतस्य मित्रावरुणा पथा वामपो न नावा दुरिता तरेम ॥३॥

हे मित्रावरुण ! तिमीहरू यज्ञदेखि विमुख व्यक्तिलाई आफ्ना बलिया बन्धनमा बाँध्छौ। नौकाले जलाशय पार गरेझैं हे देवताहरू हो ! यज्ञमार्गले हामी दुःखबाट पार पाऔं।

आ नो मित्रावरुणा हव्यजुष्टिं घृतैर्गव्यूतिमुक्षतमिळाभिः।
प्रति वामत्र वरमा जनाय पृणीतमुद्नो दिव्यस्य चारोः ॥४॥

हे मित्रावरुणहरू हो ! हाम्रा यज्ञमा आएर हव्य ग्रहण गर। हामीले टेकेको वा देखेका भूमि अन्नजलले सेचन गर। अमृतजस्तै मधुर जलले सबैलाई सन्तुष्ट गराओ।

एष स्तोमो वरुण मित्र तुभ्यं सोमः शुक्रो न वायवेऽयामि।
अविष्टं धियो जिगृतं पुरन्धीर्यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

मित्र, वरुण र वायुका लागि हामीले सोमरसजस्तै आनन्द प्रदायक स्तुति गरेका छौं। उनले हाम्रो बुद्धि र कर्म संरक्षित गरुन्। हाम्रो ज्ञानशक्ति जागृत गरुन् र कल्याणकारी साधनले कल्याण गरुन्।

[सूक्त - ६६]

ऋषि - वसिष्ठ मित्रवरुण। देवता - मित्रावरुण सूर्य। छन्द - गायत्री प्रगाथ उष्णिक्।

प्र मित्रयोर्वरुणयोः स्तोमो न एतु शूष्यः। नमस्वान्तुविजातयोः ॥१॥

बारम्बार प्रकट हुने मित्रावरुणदेवको हाम्रा स्तोत्रले अनुसरण गरोस्।

या धारयन्त देवाः सुदक्षा दक्षपितरा। असुर्याय प्रमहसा ॥२॥

मित्रावरुणदेव श्रेष्ठ बल र तेजले सम्पन्न छन्। शान्ति प्राप्त गर्नका लागि देवताहरूले उनीहरूलाई धारण गरेका थिए।

ता नः स्तिपा तनूपा वरुण जरितॄणाम्। मित्र साधयतं धियः ॥३॥

मित्र र वरुणदेव गृह एवं शरीरलाई संरक्षण प्रदान गर्दछन्। उनीहरू उपासकको स्तोत्र स्वीकार गरुन्।

यदद्य सूर उदितेऽनागा मित्रो अर्यमा। सुवाति सविता भगः ॥४॥

सूर्य उदाउँदा निष्पाप मित्र, अर्यमा, भग र सविताले हामीलाई अभीष्ट धन दिऊन्।

सुप्रावीरस्तु स क्षयः प्र नु यामन्त्सुदानवः। ये नो अंहोऽतिपिप्रति ॥५॥

हे कल्याणकारी देवताहरू हो ! तिमीहरूको आगमन भएपछि हाम्रो आवास सुरक्षित बनोस्। तिमीहरू हामीलाई पापबाट मुक्त गराओ।

उत स्वराजो अदितिरदब्धस्य व्रतस्य ये। महो राजान ईशते ॥६॥

मित्र आदि देवता आफ्नी माता अदितिसँगै हाम्रा अधिष्ठाता हुन्। हाम्रो अभीष्ट पूरा गराउनका लागि समर्थ हुनाले उनीहरू शासक हुन्।

प्रति वां सूर उदिते मित्रं गृणीषे वरुणम्। अर्यमणं रिशादसम् ॥७॥

हामी सूर्योदयमा मित्रावरुण र शत्रुसंहारक अर्यमासँगै सबै देवताको स्तुति गर्दछौं।

राया हिरण्यया मतिरियमवृकाय शवसे। इयं विप्रा मेधसातये ॥८॥

हे विद्वान् मित्र र वरुणदेव ! कल्याणकारी उत्तम धन र दुष्टतारहित बल तथा सद्बुद्धि पाउनका लागि हामी तिमीहरूलाई वन्दना गर्दछौं, स्वीकार गर।

ते स्याम देव वरुण ते मित्र सूरिभिः सह। इषं स्वश्च धीमहि ॥९॥

हे वरुणदेव ! ज्ञानवान्सँगै तिमीहरूको स्तुति गर्दै हामी वैभवयुक्त होऔं। हे मित्र ! तिम्रा स्तुतिले हामी अन्न, धन र स्वर्गको जस्तै सुख उपलब्ध गरौं।

बहवः सूरचक्षसोऽग्निजिह्वा ऋतावृधः।

त्रीणि ये येमुर्विदथानि धीतिभिर्विश्वानि परिभूतिभिः ॥१०॥

अनेकौं सूर्यजस्तै तेजस्वी, अग्निरूपी जिब्रो भएका, यज्ञका विस्तारक देवताहरू विश्वका तीनै ठाउँलाई उत्तम विभूतिले सुनियन्त्रित गराउँछन्।

वि ये दधुः शरदं मासमादहर्यज्ञमक्तुं चादृचम्।

अनाप्यं वरुणो मित्रो अर्यमा क्षत्रं राजान आशत ॥११॥

वर्ष, महिना, दिन, रात बनाएर यज्ञ र मन्त्र धारण गर्ने वीर मित्रावरुण तथा अर्यमादेवले अर्काको हितका लागि नै दुर्लभ शक्ति पाएका थिए।

तद्वो अद्य मनामहे सूक्तैः सूर उदिते।

यदोहते वरुणो मित्रो अर्यमा यूयमृतस्य रथ्यः ॥१२॥

हामी आज सूर्योदयमा सन्मार्गका दर्शक वीर मित्रावरुण र अर्यमा आदि देवताले धारण गरेको धन माग्नेछौं।

ऋतावान ऋतजाता ऋतावृधो घोरासो अनृतद्विषः।

तेषां वः सुम्ने सुच्छर्दिष्टमे नरः स्याम ये च सूरयः ॥१३॥

तिमी सत्य धारण गरेर यज्ञ आदि श्रेष्ठ कर्म गर्दछौ र सत्यबाट विमुख रहनेका शत्रु हौ। ऋत्विक्हरूसँगै हामी तिम्रो श्रेष्ठ शक्ति प्राप्त गरौं।

उदु त्यद्दर्शतं वपुर्दिव एति प्रतिह्वरे।
यदीमाशुर्वहति देव एतशो विश्वस्मै चक्षसे अरम् ॥१४॥

आजको सूर्य उदाउँदा हामी पापरहित भएकालाई मित्र, सविता, भग र अर्यमा देवताले उत्तम प्रेरणा दिएर श्रेष्ठ कर्ममा प्रेरित गरुन्।

शीर्ष्णः शीर्ष्णो जगतस्तस्थुषस्पतिं समया विश्वमा रजः।
सप्त स्वसारः सुविताय सूर्यं वहन्ति हरितो रथे ॥१५॥

शीर्ष भागमा रहेर सबैका वन्दनीय, रथमा आरूढ सूर्यदेवलाई संसारको कल्याणका लागि गतिमान् सात वटा हरिया अश्वले सारा विश्वभरि लिएर जान्छन्।

तच्चक्षुर्देवहितं शुक्रमुच्चरत्। पश्येम शरदः शतं जीवेम शरदः शतम् ॥१६॥

विश्वको कल्याण गर्ने, अन्धकार हटाउने, सबैका आँखाजस्ता सूर्यदेव हाम्रा अगाडि उदाउँदै छन्। हे देवता ! हामी सय वर्षसम्म देख्न पाऔँ, सय वर्ष बाँचौं।

काव्येभिरदाभ्या यातं वरुण द्युमत्। मित्रश्च सोमपीतये ॥१७॥

हे तेजस्वी र निडर मित्रावरुणदेव ! सोमपानका लागि स्तोताका नजिक आओ।

दिवो धामभिर्वरुण मित्रश्चा यातमद्रुहा। पिबतं सोममातुजी ॥१८॥

हे सत्य वृद्धि गराउने, द्रोहरहित मित्रावरुणदेव। सोमपान गर्न आफ्ना लोकमा आओ।

आ यातं मित्रावरुणा जुषाणावाहुतिं नरा। पातं सोममृतावृधा ॥१९॥

सत्यव्रत पालन गर्ने, नेतृत्वको क्षमता भएका हे मित्र र वरुणदेव ! तिमीहरू हाम्रो आहुति ग्रहण गरेर सोमरस पान गर।

## [सूक्त - ६७]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - अश्विनीकुमार। **छन्द** - त्रिष्टुप्।

प्रति वां रथं नृपती जरध्यै हविष्मता मनसा यज्ञियेन।
यो वां दूतो न धिष्ण्यावजीगरच्छा सूनुर्न पितरा विवक्मि ॥१॥

हे बुद्धिसम्पन्न स्वामी अश्विनीकुमार हो ! हामी उदार र पवित्र मनले तिमीहरूका रथलाई आह्वान गर्दछौं। पिताले पुत्रलाई जगाएझैं तिमीहरूका रथले सचेत गराओस्।

अशोच्यग्निः समिधानो अस्मे उपो अदृश्रन्तमसश्चिदन्ताः।
अचेति केतुरुषसः पुरस्ताच्छ्रिये दिवो दुहितुर्जायमानः ॥२॥

हाम्रा लागि अग्निदेव प्रदीप्त हुँदै छन्, अन्धकारको अन्त्य हुँदै छ। द्युलोकको पुत्रीका अगाडि प्रकट हुने सूर्यदेव शोभाको बोध गराउँछन्।

अभि वां नूनमश्विना सुहोता स्तोमैः सिषक्ति नासत्या विवक्वान्।
पूर्वीभिर्यातं पथ्याभिर्वाक्स्वर्विदा वसुमता रथेन ॥३॥

हे सत्यको नियम पालन गर्ने अश्विनीकुमार हो ! सुन्दर अभिव्यक्ति भएका श्रेष्ठ होता स्तोत्रले तिमीहरूलाई प्रार्थना गर्दछन्। ऐश्वर्ययुक्त रथ चढेर पूर्व दिशामा आओ।

अवोर्वां नूनमश्विना युवाकुर्हुवे यद्वां सुते माध्वी वसूयुः।
आ वां वहन्तु स्थविरासो अश्वाः पिबाथो अस्मे सुषुता मधूनि ॥४॥

हे रक्षक र मृदुभाषी अश्विनीकुमार हो ! हामी ऐश्वर्यको कामनाले यस सोमयागमा तिमीहरूलाई आह्वान गर्दछौं। आफ्ना पाका अश्वमा सोमपानका लागि आओ।

प्राचीमु देवाश्विना धियं मेऽमृध्रां सातये कृतं वसूयुम्।
विश्वा अविष्टं वाज आ पुरन्धीस्ता नः शक्तं शचीपती शचीभिः ॥५॥

हे शक्तिका स्वामी अश्विनीकुमारहरू हो ! धनको कामना गर्ने हाम्रो बुद्धि सरल र अहिंसक बनाइदेओ। त्यसलाई लाभको योग्य बनाइदेओ। युद्धमा हाम्रा बुद्धिको रक्षा गर। हामीलाई शक्तिले सम्पन्न बनाओ।

अविष्टं धीष्वश्विना न आसु प्रजावद्रेतो अह्रयं नो अस्तु।
आ वां तोके तनये तूतुजानाः सुरत्नासो देववीतिं गमेम ॥६॥

हे अश्विनीकुमार हो ! श्रेष्ठ कर्मका लागि हाम्रा बुद्धिको रक्षा गर। हाम्रो सन्तान उत्पादन गर्ने शक्ति

समाप्त नहोस्। तिमीहरूका कृपाले सन्तानलाई मनग्गे धन दिएर रत्नले अलङ्कृत हुँदै हामी दिव्य पवित्रता प्राप्तिका लागि यज्ञीय जीवन बाँचौं।

**एष स्या वां पूर्वगत्वेव सख्ये निधिर्हितो माध्वी रातो अस्मे।**
**अहेळता मनसा यातमर्वागश्नन्ता हव्यं मानुषीषु विक्षु ॥७॥**

हे मधुरभाषी अश्विनीकुमार हो। तिमीहरूले हामीलाई दिएको सम्पत्ति तिमीहरूलाई नै समर्पित गरेका छौं। प्रसन्न भएर हाम्रा अगाडि आओ र प्रजाले दिएको हव्य ग्रहण गर।

**एकस्मिन्योगे भुरणा समाने परि वां सप्त स्रवतो रथो गात्।**
**न वायन्ति सुभ्वो देवयुक्ता ये वां धूर्षु तरणयो वहन्ति ॥८॥**

हे पोषक अश्विनीकुमार हो! तिमीहरूको रथ बग्दै गरेका सात वटा नदी नाघेर जान्छ। देवताहरूले खटाएको असल जुनी पाएका घोडा कहिल्यै थाक्दैनन्।

**असश्चता मघवद्भ्यो हि भूतं ये राया मघदेयं जुनन्ति।**
**प्र ये बन्धुं सूनृताभिस्तिरन्ते गव्या पृञ्चन्तो अश्व्या मघानि ॥९॥**

जसले मिठो बोलेर गाई र घोडायुक्त ऐश्वर्य दान गर्दै अरूलाई प्रेरणा दिन्छन्, तिमीहरू त्यस्ता व्यक्तिदेखि टाढा नहोओ, उनीहरूका घरमा आओ।

**नू मे हवमा शृणुतं युवाना यासिष्टं वर्तिरश्विनाविरावत्।**
**धत्तं रत्नानि जरतं च सूरीन् यूयं पात स्वस्तिभिः सदा नः ॥१०॥**

हे दुई युवा अश्विनीकुमार हो! हाम्रो स्तुति सुन। तिमीहरूलाई हव्य प्राप्त हुने ठाउँमा आओ र रत्न दिएर सुखी गराओ अनि सधैं कल्याणकारी साधनले हाम्रो सुरक्षा गर।

[सूक्त - ६८]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - अश्विनीकुमार। **छन्द** - विराट त्रिष्टुप्।

**आ शुभ्रा यातमश्विना स्वश्वा गिरो दस्रा जुजुषाणा युवाकोः।**
**हव्यानि च प्रतिभृता वीतं नः ॥१॥**

हे सुन्दर घोडायुक्त, शत्रुको नाश गर्ने अश्विनीकुमार हो! हामी स्तोताको प्रार्थना सुनेबित्तिकै यहाँ आएर हव्य ग्रहण गर।

**प्र वामन्धांसि मद्यान्यस्थुररं गन्तं हविषो वीतये मे।**
**तिरो अर्यो हवनानि श्रुतं नः ॥२॥**

हे अश्विनीकुमार हो! तिमीहरूका लागि श्रेष्ठ हवि समर्पित गरिएको छ। यो हव्य ग्रहण गर्नका लागि प्रार्थना सुनेर तिमीहरू यहाँ आओ र हाम्रा शत्रु विनाश गर।

**प्र वां रथो मनोजवा इयर्ति तिरो रजांस्यश्विना शतोतिः।**
**अस्मभ्यं सूर्यावसू इयानः ॥३॥**

हे देवताहरू हो! तिमीहरू सूर्यदेवसँगै हजारौं साधनले युक्त, मनजस्तै वेगवान् रथमा आरुढ भएर अन्य लोक छोडेर हाम्रा यज्ञमा आउँछौ।

**अयं ह यद्वां देवया उ अद्रिरूर्ध्वो विवक्ति सोमसुद्युवभ्याम्।**
**आ वल्गू विप्रो ववृतीत हव्यैः ॥४॥**

हे अश्विनीकुमार हो! तिमीहरूलाई यज्ञमा बोलाउनका लागि हामीले सोमरस पेल्दा यस सोम पेल्ने ढुङ्गाबाट ठूलो शब्द आउँछ। त्यसै बेला ज्ञानी होताहरू हविष्यान्नका लागि तिमीहरूलाई आह्वान गर्दछन्।

**चित्रं ह यद्वां भोजनं न्वस्ति न्यत्रये महिष्वन्तं युयोतम्।**
**यो वामोमानं दधते प्रियः सन् ॥५॥**

तिमीहरूले महिमाशाली अत्रिका लागि छुट्टै किसिमको विलक्षण बल बढाउने खाद्य पदार्थ निकालेका थियौ। उनी प्रिय हुनाले तिमीहरूकै आश्रयमा रहन्छन्।

**उत त्यद्वां जुरते अश्विना भूच्च्यवानाय प्रतीत्यं हविर्दे।**
**अधि यद्वर्प इतऊति धत्थः ॥६॥**

हे अश्विनीकुमार हो! हव्य प्रदान गर्ने र जीर्ण भएका च्यवन ऋषिलाई तिमीहरूले मृत्यु जित्ने रूप प्रदान गर्‍यौ, त्यो रूप प्रसिद्ध बन्यो।

उत त्यं भुज्युमश्विना सखायो मध्ये जहुर्दु रेवासः समुद्रे।
निरीं पर्षदरावा यो युवाकुः ॥७॥

हे अश्विनीकुमार हो ! राजपुत्र भुज्युलाई उसका दुष्ट मित्रले समुद्रमा खसालिदिए। तिमीहरूको प्रार्थना गर्ने ती भुज्युलाई तिमीहरूले पार लगाएका थियौ।

वृकाय चिज्जसमानाय शक्तमुत श्रुतं शयवे हूयमाना।
यावघ्न्यामपिन्वतमपो न स्तर्यं चिच्छक्त्यश्विना शचीभिः ॥८॥

हे देवताहरू हो ! तिमीहरूले ख्याउटे जिउका वृकलाई शक्तिमान् बनाएका थियौ र शयुको हित गर्नका लागि पनि तिमीहरू आयौ। तिमीहरूले ती दुवैको प्रार्थना सुनेका थियौ। तिमीहरू दुवैले वन्ध्या गाईलाई दुध दिन सक्षम गराएका थियौ।

एष स्य कारुर्जरते सूक्तैरग्रे वुधान उषसां सुमन्मा।
इषा तं वर्धदघ्न्या पयोभिर्यूयं पात स्वस्तिभिः सदा नः ॥९॥

उत्तम विचार भएका स्तोताहरू उषा कालभन्दा पहिले उठेर प्रार्थना गर्दछन्। तिमीहरू तिनलाई अन्न, दुध आदिले सुखी गराओ र कल्याणकारी साधनले पालन गर।

[सूक्त - ६९]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

आ वां रथो रोदसी बद्बधानो हिरण्ययो वृषभिर्यात्वश्वैः।
घृतवर्तनिः पविभी रुचान इषां वोढा नृपतिर्वाजिनीवान् ॥१॥

बलवान् अश्वले तानिने तिमीहरूको रथ पृथ्वी र आकाशका सबै ठाउँमा पुग्दछ। त्यसका पाङ्ग्रामा जल छ, अन्नवाहक घिउ आदि औषधिले युक्त र प्रजाको स्वामी त्यो रथ यहाँ आओस्।

स पप्रथानो अभि पञ्च भूमा त्रिवन्धुरो मनसा यातु युक्तः।
विशो येन गच्छथो देवयन्तीः कुत्रा चिद्याममश्विना दधाना ॥२॥

पाँचैलाई स्थान प्रदान गर्ने तीन वटा बस्ने आसन भएको, मनअनुसार चल्ने रथबाट जतासुकै जान रुचाउने तिमीहरू यहाँ अवश्य आओ।

स्वश्वा यशसा यातमर्वाग्दस्रा निधिं मधुमन्तं पिबाथः।
वि वां रथो वध्वाऽ यादमानोऽन्तान्दिवो बाधते वर्तनिभ्याम् ॥३॥

हे शत्रुहन्ता अश्विनीकुमार हो ! तिमीहरू असल घोडा नारिएका रथमा बसेर अन्नसँगै यहाँ आओ र मधुरस पान गर। सूर्यासँग रमाउने तिमीहरूको रथ गतिशील पाङ्ग्राले द्युलोकको अन्तिम किनार पनि आन्दोलित गराउँछ।

युवोः श्रियं परि योषावृणीत सूरो दुहिता परितक्म्यायाम्।
यद्देवयन्तमवथः शचीभिः परि घ्रंसमोमना वां वयो गात् ॥४॥

सूर्यपुत्री उषा तिमीहरूका सुन्दर रथमा बसिन्। तिमीहरूले स्तोताको सुरक्षा गर्दा अन्न आदि साधन तिमीहरूसित आउँछ।

यो ह स्य वां रथिरा वस्त उस्रा रथो युजानः परियाति वर्तिः।
तेन नः शं योरुषसो व्युष्टौ न्यश्विना वहतं यज्ञे अस्मिन् ॥५॥

हे रथमा चढेका वीरहरू हो ! तिमीहरूको रथ तेजले ढाकिएर, अश्व जोतिएर आकाश मार्गबाट जान्छ। हे अश्विनीकुमार हो ! तिमीहरू बिहान पाप नाश गर्न र सुखशान्ति प्रदान गर्नका लागि उसै रथबाट हाम्रा यज्ञमा आओ।

नरा गौरेव विद्युतं तृषाणास्माकमद्य सवनोप यातम्।
पुरुत्रा हि वां मतिभिर्हवन्ते मा वामन्ये नि यमन्देवयन्तः ॥६॥

हे नेतृत्वको क्षमताले सम्पन्न दुई अश्विनीकुमार हो ! गौर मृगजस्तो शीघ्रतापूर्वक सोमपान गर्ने कामना भएका तिमीहरू यज्ञमा आओ। देवत्वको कामना भएकाहरू स्तुति गर्दै तिमीहरूलाई बोलाउँछन्। तिमीहरू नबिसाओ।

युवं भुज्युमवविद्धं समुद्र उदूहथुरर्णसो अस्रिधानैः।
पतत्रिभिरश्रमैरव्यथिभिर्दंसनाभिरश्विना पारयन्ता ॥७॥

हे अश्विनीकुमार हो ! समुद्रमा डुब्न लागेका भुज्युलाई तिमीहरूले चरोझैं गतिशील, कहिल्यै जीर्ण नहुने, नथाक्ने द्रुतगामी कुशल क्रियाद्वारा निकालेका थियौ।

नू मे हवमा शृणुतं युवाना यासिष्टं वर्तिरश्विनाविरावत्।
धत्तं रत्नानि जरतं च सूरीन् यूयं पात स्वस्तिभिः सदा नः ॥८॥

हे युवा अश्विनीकुमारहरू हो ! हाम्रो प्रार्थना तिमीहरू सुन र जहाँबाट तिमीहरूलाई हव्य प्राप्त हुन्छ, त्यहाँ आओ। स्तोताहरूलाई रत्न दिएर सुखी बनाओ। सधैं कल्याणकारी साधनले हाम्रो सुरक्षा गर।

[सूक्त - ७०]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - अश्विनीकुमार। छन्द - विराट त्रिष्टुप्।

आ विश्ववाराश्विना गतं नः प्र तत्स्थानमवाचि वां पृथिव्याम्।
अश्वो न वाजी शुनपृष्ठो अस्थादा यत्सेदथुर्ध्रुवसे न योनिम् ॥१॥

हे सर्वश्रेष्ठ अश्विनीकुमार हो ! हामीकहाँ आओ र बलियो घोडाको पिठ्युँमा बसेझैं सुविस्तासाथ पृथ्वीमा प्रशंसनीय यस ठाउँमा बस।

सिषक्ति सा वां सुमतिश्चनिष्ठातापि घर्मो मनुषो दुरोणे।
यो वां समुद्रान्त्सरितः पिपर्त्येतग्वा चित्र सुयुजा युजानः ॥२॥

हे अश्विनीकुमार हो ! बुद्धिमान् स्तोताले तिमीहरूको प्रार्थना गर्दछन्। मानिसका घरमा उष्णता प्रदान गर्ने पदार्थ सक्रिय छ। त्यसका प्रभावले नदी र समुद्र भरिँदै छन्। अश्वले रथ तानेझैं यज्ञ पनि तिमीहरू दुईले युक्त हुन्छ।

यानि स्थानान्यश्विना दधाथे दिवो यह्वीष्वोषधीषु विक्षु।
नि पर्वतस्य मूर्धनि सदन्तेषं जनाय दाशुषे वहन्ता ॥३॥

हे अश्विनीकुमार हो ! द्युलोकबाट झरेर पर्वतका चुचुरा, सोम आदि औषधिमा तिमीहरू अडिन्छौ। त्यस्तो अन्न आदि तिमीहरू यज्ञस्थलका दानशील प्रजालाई प्रदान गर।

चनिष्टं देवा ओषधीष्वप्सु यद्योग्या अश्नवैथे ऋषीणाम्।
पुरूणि रत्ना दधतौ न्यस्मे अनु पूर्वाणि चख्यथुर्युगानि ॥४॥

हे दुवै अश्विनीकुमार हो ! तिमीहरू ऋषिले प्रदान गरेको अन्न, जल आदि प्राप्त गर्दछौ। त्यसै कारण हामीबाट पनि औषधि र जल ग्रहण गर। तिमीहरू उहिलेका दम्पतीलाई रत्न आदिले पूर्ण गराउँथ्यौ, उसै गरी यस बेला पनि उस्तै बनाओ।

शुश्रुवांसा चिदश्विना पुरूण्यभि ब्रह्माणि चक्षाथे ऋषीणाम।
प्रति प्र यातं वरमा जनायास्मे वामस्तु सुमतिश्चनिष्ठा ॥५॥

हे अश्विनीकुमार हो ! ऋषिहरूले स्तुति गरेपछि तिमीहरू सधैं कल्याण गर्दछौ। यस यज्ञमा तिमीहरू दुवै आओ र तिमीहरूको कृपा हामीलाई पनि प्राप्त होस्।

यो वां यज्ञो नासत्या हविष्मान् कृतब्रह्मा समर्यो३ भवाति।
उप प्र यातं वरमा वसिष्ठमिमा ब्रह्माण्यृच्यन्ते युवभ्याम् ॥६॥

हे सत्यको अनुशासनमा रहेका अश्विनीकुमार हो ! स्तुति मन्त्र निर्माण गरेर हविष्यान्नले विश्वको कल्याण गर्नका लागि यज्ञकर्ता वसिष्ठकहाँ तिमीहरू जान्छौ। किनभने उनी तिमीहरूकै प्रार्थना गर्दछन्।

इयं मनीषा इयमश्विना गीरिमां सुवृक्तिं वृषणा जुषेथाम्।
इमा ब्रह्माणि युवयून्यग्मन्यूयं पात स्वस्तिभिः सदा नः ॥७॥

हे बलवान् अश्विनीकुमार हो ! हामीले आफ्ना इच्छाले वाणीद्वारा यो स्तुति तिमीहरूको प्रसन्नताका लागि गरेका छौं। यसलाई स्वीकार गरेर कल्याणकारी साधनले हामीलाई सुरक्षित राख।

[सूक्त - ७१]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

अप स्वसुरुषसो नग्जिहिते रिणक्ति कृष्णीररुषाय पन्थाम्।
अश्वामघा गोमघा वां हुवेम दिवा नक्तं शरुमस्मद्युयोतम् ॥१॥

आफ्नी बहिनी उषासित छुट्टिएकी रात्रि रातो बिम्ब हुने सूर्यदेवको बाटो खुलाउँछिन्। गाई र घोडारूपी धनद्वारा ऐश्वर्य प्रदान गर्ने हे देवताहरू हो ! हामी तिमीहरूलाई आह्वान गर्दछौं। तिमीहरू दिन र रातका शत्रुलाई पर भगाइदेओ।

उपायातं दाशुषे मर्त्याय रथेन वाममश्विना वहन्ता।
युयुतमस्मदनिराममीवां दिवा नक्तं माध्वी त्रासीथां नः ॥२॥

मधुर स्वभाव भएका अश्विनीकुमार देवताहरू हवि प्रदान गर्नेहरूका लागि रथमा सुन्दर पदार्थ लिएर आऊन् र हाम्रो रोग एवं दरिद्रता हटाउँदै दिनरात हाम्रो सुरक्षा गरून्।

आ वां रथमवमस्यां व्युष्टौ सुम्नायवो वृषणो वर्तयन्तु।
स्यूमगभस्तिमृतयुग्भिरश्वैराश्विना वसुमन्तं वहेथाम् ॥३॥

हे अश्विनीकुमार हो ! उषा कालमा बलियो भएर स्वेच्छाले चल्ने अश्वले तिमीहरूलाई लिएर हामीकहाँ आओस् र तिमी तेजस्विता एवं उत्तम सम्पत्ति प्रदान गर।

यो वां रथो नृपती अस्ति वोळ्हा त्रिवन्धुरो वसुमाँ उस्रयामा।
आ न एना नासत्योप यातमभि यद्वां विश्वप्स्न्यो जिगाति ॥४॥

हे याजकहरूका रक्षक देवताहरू हो ! तिमीहरूका शीघ्रगामी रथ ऐश्वर्यसम्पन्न, तीन वटा बस्ने आसन भएको, व्यापक रूपमा गमन गर्ने खालको छ। त्यस रथमा तिमीहरू हामीतिर आओ।

युवं च्यवानं जरसोऽमुमुक्तं नि पेदव ऊहथुराशुमश्वम्।
निरंहसस्तमसः स्पर्तमत्रिं नि जाहुषं शिथिरे धातमन्तः ॥५॥

हे देवताहरू हो ! तिमीहरूले च्यवन ऋषिलाई बुढ्यौलीबाट जोगाएका थियौ। राजा पेदुकहाँ द्रुतगामी अश्व पठाइदिएका थियौ। अत्रिलाई पापका अन्धकारबाट मुक्त गरेका थियौ र राज्यबाट च्युत भएका जाहुषलाई पुनः राज्य प्राप्त गराएका थियौ।

इयं मनीषा इयमश्विना गीरिमां सुवृक्तिं वृषणा जुषेथाम्।
इमा ब्रह्माणि युवयून्यग्मन् यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

हे बलवान् अश्विनीकुमार हो ! हामीले आफ्ना इच्छाले वाणीद्वारा यो स्तुति तिमीहरूका प्रसन्नताका लागि गरेका हौं। तिमीहरू यसलाई स्वीकार गर र कल्याणकारी साधनले हामीलाई सुरक्षित राख।

## [सूक्त - ७२]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

आ गोमता नासत्या रथेनाश्वावता पुरुश्चन्द्रेण यातम्।
अभि वां विश्वा नियुतः सचन्ते स्पार्हया श्रिया तन्वा शुभाना ॥१॥

हे सत्यव्रती अश्विनीकुमार देवता हो ! गाई र अश्व आदि ऐश्वर्यले सम्पन्न रथमा तिमीहरू यहाँ आओ। तिमीहरू श्रेष्ठ तेजले शोभायमान होओ। स्तोताले तिमीहरूका अनेकौं स्तुति गाऊन्।

आ नो देवेभिरुप यातमर्वाक् सजोषसा नासत्या रथेन।
युवोर्हि नः सख्या पित्र्याणि समानो बन्धुरुत तस्य वित्तम् ॥२॥

हे सत्यव्रती अश्विनीदेव हो ! तिमीहरू दुवै देवतासँगै प्रेमपूर्वक रथमा चढेर हामीकहाँ आओ। तिमीहरूसित हाम्रा पुर्खाको पनि सम्बन्ध थियो। हाम्रा र तिमीहरूका पुर्खा तथा उनीहरूको धन पनि एउटै हो।

उदु स्तोमासो अश्विनोरबुध्रञ्जामि ब्रह्माण्युषसश्च देवीः।
आविवासन्रोदसी धिष्ण्येमे अच्छा विप्रो नासत्या विवक्ति ॥३॥

अश्विनीकुमारलाई स्तुतिले जगाउँछ। सबै मानिस उत्तम कर्मले उषा काल चैतन्य गर्दछन्। वसिष्ठ, द्युलोक र पृथ्वीले सेवा गर्दै दुवै अश्विनीकुमारको स्तुति गर्दछन्।

वि चेदुच्छन्त्यश्विना उषासः प्र वां ब्रह्माणि कारवो भरन्ते।
ऊर्ध्वं भानुं सविता देवो अश्रेद्बृहदग्नयः समिधा जरन्ते ॥४॥

हे अश्विनीकुमार हो ! उषाले अन्धकार हटाएपछि स्तोताले तिमीहरू दुवैको प्रार्थना गर्दछन्। सूर्यदेवता उर्ध्वगामी हुँदै तेजस्विता धारण गर्दै छन्। यज्ञका समिधाले अग्नि प्रज्वलित भइरहेको छ।

आ पश्चातान्नासत्या पुरस्तादाश्विना यातमधरादुदक्तात्।
आ विश्वतः पाञ्चजन्येन राया यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

हे सत्यव्रती अश्विनीकुमार हो ! पाँचै थरीको हित गर्नका लागि माथितल, अघिपछि चारै तिरबाट धन लिएर आओ। आफ्नो सधैं कल्याणकारी साधनले हाम्रो रक्षा गर।

[सूक्त - ७३]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

**अतारिष्म तमसस्पारमस्य प्रति स्तोमं देवयन्तो दधानाः।**
**पुरुदंसा पुरुतमा पुराजामर्त्या हवते अश्विना गीः ॥१॥**

हे दुई अश्विनीकुमार हो ! देवत्व प्राप्तिका इच्छाले प्रार्थना गर्ने अज्ञानरूपी अन्धकारबाट पार होऔं। धेरै कर्म गर्ने, उहिल्यैदेखि अमर कीर्ति भएका हे अश्विनीकुमार देवताहरू हो ! स्तोताहरू तिमीहरूलाई आह्वान गर्दछन्।

**न्यू प्रियो मनुषः सादि होता नासत्या यो यजते वदन्ते च।**
**अश्नीतं मध्वो अश्विना उपाक आ वां वोचे विदथेषु प्रयस्वान् ॥२॥**

हे सत्यपालक अश्विनीकुमार देवता हो ! यज्ञ र प्रणाम गर्ने याजक यज्ञशालामा बसेका छन्। तिमीहरू उनका नजिकै गएर मधुर सोमरस पान गर। यज्ञमा हव्य समर्पित गरेर हामी तिमीहरूलाई प्रार्थना गर्दछौं।

**अहेम यज्ञं पथामुराणा इमां सुवृक्तिं वृषणा जुषेथाम्।**
**श्रुष्टीवेव प्रेषितो वामबोधि प्रति स्तोमैर्जरमाणो वसिष्ठः ॥३॥**

हे बलशाली हो ! स्तोता वसिष्ठले तिमीहरूलाई जागृत गराउनका लागि शीघ्रगामी दूतभैं स्तोत्र सम्प्रेषित गर्दै छन्। तिमीहरू स्तुतिले प्रसन्न होओ। हामी तिमीहरूका मार्गको अनुसरण गर्नका लागि यज्ञ सम्पन्न गर्दछौं।

**उप त्या वह्नी गमतो विशं नो रक्षोहणा सम्भृता वीडुपाणी।**
**समन्धांस्यग्मत मत्सराणि मा नो मर्धिष्टमा गतं शिवेन ॥४॥**

राक्षसहन्ता र दृढ हात भएका दुवै देवताहरू हाम्रा सन्तानकहाँ आऊन्। उनीहरूले हाम्रो कष्ट नबढाऊन्। आनन्द प्रदान गर्ने सोमपानका लागि मङ्गलपूर्वक यहाँ आइदिऊन्।

**आ पश्चातान्नासत्या पुरस्तादाश्विना यातमधरादुदक्तात्।**
**आ विश्वतः पाञ्चजन्येन राया यूयं पात स्वस्तिभिः सदा नः ॥५॥**

हे सत्यव्रती अश्विनीकुमार हो ! पाँचै थरीको हितका लागि माथितल, अघिपछि चारै तिरबाट धन लिएर आओ। तिमीहरू सधैं कल्याणकारी साधनले हाम्रो रक्षा गर।

[सूक्त - ७४]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - अश्विनीकुमार। छन्द - प्रगाथ।

**इमा उ वां दिविष्टय उस्रा हवन्ते अश्विना।**
**अयं वामह्वेऽवसे शचीवसू विशंविशं हि गच्छथः ॥१॥**

हे सम्पूर्ण प्राणीका आश्रयदाता अश्विनीकुमार हो ! प्रकाशको कामना गर्ने प्रजाहरू तिमीहरूको आह्वान गर्दछन्। सबै मानिसका नजिक जाने र पराक्रमी धन आर्जन गर्नेहरू आफ्नो संरक्षणका लागि तिमीहरूलाई आह्वान गर्दछन्।

**युवं चित्रं ददथुर्भोजनं नरा चोदेथां सूनृतावते।**
**अर्वाग्रथं समनसा नि यच्छतं पिबतं सोम्यं मधु ॥२॥**

हे दिव्य आहार हुने नेतृत्व क्षमताले सम्पन्न हे अश्विनीकुमार हो ! स्तुति गर्नका लागि प्रेरित गर्ने हे देवताहरू हो ! रथ अड्याएर मन लगाउँदै यहाँ मधुर रस पान गर।

**आ यातमुप भूषतं मध्वः पिबतमश्विना।**
**दुग्धं पयो वृषणा जेन्यावसू मा नो मर्धिष्टमा गतम् ॥३॥**

हे अश्विनीकुमारहरू हो ! तिमीहरू दुवै हाम्रा यज्ञमा आओ र शोभा बढाओ। यहाँ आएर मधुर रस पान गर। हे वर्षा गराउने देवता र धनका अधिपति हो ! हामीलाई तिमीहरू दुध आदि पेय पदार्थले पूर्ण गराउँदै आइदेओ। हामीलाई नसताओ।

**अश्वासो ये वामुप दाशुषो गृहं युवां दीयन्ति बिभ्रतः।**
**मक्षुयुभिर्नरा हयेभिरश्विना देवा यातमस्मयू ॥४॥**

नेतृत्व क्षमताले सम्पन्न हे अश्विनीकुमार हो ! अश्वले तिमीहरूलाई हव्यदाताका घरसम्म पुऱ्याउँछन्। तिमीहरू चाँडो कुद्ने अश्वले यहाँ आइदेओ।

अधा ह यन्तो अश्विना पृक्षः सचन्त सूरयः ।
ता यंसतो मघवद्भ्यो ध्रुवं यशश्छर्दिरस्मभ्यं नासत्या ॥५॥

हे सत्यव्रती अश्विनीकुमारहरू हो ! स्तोताले अन्न आदि पाऊन् । हामीलाई अविचल यश र उत्तम घर प्राप्त गराओ । हामी तिमीहरूका कृपाले धनसम्पन्न छौं ।

प्र ये ययुरवृकासो रथा इव नृपातारो जनानाम् ।
उत स्वेन शवसा शूशुवुर्नर उत क्षियन्ति सुक्षितिम् ॥६॥

प्रजाको पालक र अहिंसक भएर रथझैं तिमीहरूका नजिक आउने नेतृत्वकर्ता आफ्नै शक्तिले अघि बढ्दछन् र बस्नका लागि राम्रो स्थान प्राप्त गर्दछन् ।

[सूक्त - ७५]

ऋषि - वसिष्ठ मैत्रावरुणि । देवता - उषा । छन्द - त्रिष्टुप् ।

व्युषा आवो दिविजा ऋतेनाऽऽविष्कृण्वाना महिमानमागात् ।
अप द्रुहस्तम आवरजुष्टमङ्गिरस्तमा पथ्या अजीगः ॥१॥

देवी उषा अन्तरिक्षबाट उत्पन्न भएर प्रकाश फैलाउँदै तेजले आफ्नो महत्त्व प्रकट गर्दै आउँदै छिन् । उनले अन्धकाररूपी शत्रु पर हटाएर गन्तव्यपथ प्रकाशित गरेकी छिन् ।

महे नो अद्य सुविताय बोध्युषो महे सौभगाय प्र यन्धि ।
चित्रं रयिं यशसं धेह्यस्मे देवि मर्तेषु मानुषि श्रवस्युम् ॥२॥

हे उषादेवी ! आज तिमी हाम्रो सुख बढाउनका लागि चेतन भएर सौभाग्य प्रदान गर र हाम्रा लागि विशेष यशले युक्त धन धारण गर । मनुष्यको हित गर्ने देवी उषा अन्नसहित पुत्र प्रदान गरुन् ।

एते त्ये भानवो दर्शतायाश्चित्रा उषसो अमृतास आगुः ।
जनयन्तो दैव्यानि व्रतान्यापृणन्तो अन्तरिक्षा व्यस्थुः ॥३॥

उषादेवीको किरण दर्शनीय, विचित्र र अविनाशी छ । यिनी दिव्य व्रत उत्पादन गरेर समस्त अन्तरिक्षलाई पूर्ण गराउँदै सर्वतिर फैलँदै छिन् ।

एषा स्या युजाना पराकात्पञ्च क्षितीः परि सद्यो जिगाति ।
अभिपश्यन्ती वयुना जनानां दिवो दुहिता भुवनस्य पत्नी ॥४॥

द्युलोककी पुत्री उषादेवी पाँच किसिमका मानिसलाई परिश्रम गर्नका लागि प्रेरित गर्दै उनीहरूका नजिक पुगेर भुवनको पालन गर्दछिन् ।

वाजिनीवती सूर्यस्य योषा चित्रामघा राय ईशे वसूनाम् ।
ऋषिष्टुता जरयन्ती मघोन्युषा उच्छति वह्निभिर्गृणाना ॥५॥

सूर्यकी गृहिणी उषा अन्नयुक्त विचित्र धन र वैभवशालिनी छन् । ऋषिहरूले स्तुति गर्ने, अन्धकार जर्जर पार्ने र धन दिने उषा स्तोताबाट प्रशंसा पाउँदै विहानी निम्त्याउँछिन् ।

प्रति द्युतानामरुषासो अश्वाश्चित्रा अदृश्रन्नुषसं वहन्तः ।
याति शुभ्रा विश्वपिशा रथेन दधाति रत्नं विधते जनाय ॥६॥

दीप्तिसम्पन्न उषा लिएर जाने, विलक्षण, सुशोभित अश्व देखिँदै छन् । स्वच्छ वर्णकी उषा सुन्दर रथले सर्वत्र गमन गर्दछिन् र परिश्रमीलाई ऐश्वर्य प्रदान गर्दछिन् ।

सत्या सत्येभिर्महती महद्भिर्देवी देवेभिर्यजता यजत्रैः ।
रुजद् दृळ्हानि ददुस्रियाणां प्रति गाव उषसं वावशन्त ॥७॥

सत्यस्वरूपा र पूजा योग्य उषा सत्यको पालन गर्ने महान् देवताहरूसँग गाढा अन्धकार समाप्त गर्दछिन् र गाई प्रकट गराउँछिन् । त्यसैले गाईले उषाको खोजी गर्दछन् ।

नू नो गोमद्वीरवद्धेहि रत्नमुषो अश्वावत्पुरुभोजो अस्मे ।
मा नो बर्हिः पुरुषता निदे कर्यूयं पात स्वस्तिभिः सदा नः ॥८॥

हे उषादेवी ! हामी सबैका लागि गाई, अश्व र वीर पुत्रसहित धन प्रदान गर । मानिसका समाजमा हाम्रो यज्ञ निन्दित नहोस् । हामीलाई कल्याणकारी साधनले सुरक्षित राख ।

[सूक्त - ७६]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - उषा। छन्द - त्रिष्टुप्।

उदु ज्योतिरमृतं विश्वजन्यं विश्वानरः सविता देवो अश्रेत्।
ऋत्वा देवानामजनिष्ट चक्षुराविरकर्भुवनं विश्वमुषाः ॥१॥

विश्वनियन्ता सवितादेवले अमृतजस्तो सर्वहितैषि ज्योति धारण गरेका छन्। देवताका नेत्ररूपी उषा देवकार्यका लागि प्रकट भएका छन्। उषादेवी सबै भुवनलाई प्रकाशले भरिपूर्ण गर्दछिन्।

प्र मे पन्था देवयाना अदृश्रन्नमर्धन्तो वसुभिरिष्कृतासः।
अभूदु केतुरुषसः पुरस्तात्प्रतीच्यागादधि हर्म्येभ्यः ॥२॥

संस्कारित स्थिर तेज र विनाकष्ट देवताहरू आवतजावत गर्ने मार्ग हामीले देखेका छौं। पूर्व दिशामा झन्डा फर्फराउँदै हाम्रा सामु ऊर्ध्वलोकबाट उषा आउँछिन्।

तानीदहानि बहुलान्यासन्या प्राचीनमुदिता सूर्यस्य।
यतः परि जारइवाचरन्त्युषो ददृक्षे न पुनर्यतीव ॥३॥

हे उषादेवी ! सूर्योदयभन्दा पहिले नै तिम्रो तेज प्रकाशित हुन्छ, किनभने तिमी पतिव्रता स्त्रीझैं जस्तै सूर्यदेवको सेवा गर्दछ्यौ, कुलटाको जस्तो होइन।

त इद्देवानां सधमाद आसन्नृतावानः कवयः पूर्व्यासः।
गूळ्हं ज्योतिः पितरो अन्वविन्दन्त्सत्यमन्त्रा अजनयन्नुषासम् ॥४॥

उहिलेका अङ्गिराहरू सत्यव्रती, कवि, मन्त्र सिद्ध गर्ने र पालनकर्ता थिए। उनीहरूले गुप्त तेज प्राप्त गरे र देवताहरूसँगै सोमरस ग्रहण गरे। उनीहरूले नै मन्त्रका बलले उषालाई प्रकट गरे।

समान ऊर्वे अधि सङ्गतासः सं जानते न यतन्ते मिथस्ते।
ते देवानां न मिनन्ति व्रतान्यमर्धन्तो वसुभिर्यादमानाः ॥५॥

ती ऋषिहरू गाई, यज्ञ आदिका काममा एकमत भएर सङ्गठित भएका छन्। सधैं देवताको मर्यादा पालन गर्ने उनीहरू आपसमा हिंसा र कलह कहिल्यै गर्दैनन्। त्यसैले उनीहरू धनऐश्वर्यका स्वामी भए।

प्रति त्वा स्तोमैरीळते वसिष्ठा उषर्बुधः सुभगे तुष्टुवांसः।
गवां नेत्री वाजपत्नी न उच्छोषः सुजाते प्रथमा जरस्व ॥६॥

हे सुभगा उषादेवी ! उषाकालमा बिउँझिएर वसिष्ठहरू स्तोत्रले प्रार्थना गर्दछन्। तिमी गाई प्राप्त गरेर अन्नको सुरक्षा गर्दछ्यौ। सहज जन्म पाएकी उषा सबैलाई प्रकाश दिएका कारण देवताहरूमा प्रशंसित छन्।

एषा नेत्री राधसः सूनृतानामुषा उच्छन्ती रिभ्यते वसिष्ठैः।
दीर्घश्रुतं रयिमस्मे दधाना यूयं पात स्वस्तिभिः सदा नः ॥७॥

अन्धकार मेटाउने र वसिष्ठहरूले प्रशंसा गरिएकी उषादेवी स्तुतिकी प्रेरक पनि हुन्। हे उषादेवी ! हामीलाई प्रसिद्ध, श्रेष्ठ धन प्रदान गरेर हाम्रो पालन र कल्याण गर।

[सूक्त - ७७]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - उषा। छन्द - त्रिष्टुप्।

उपो रुरुचे युवतिर्न योषा विश्वं जीवं प्रसुवन्ती चरायै।
अभूदग्निः समिधे मानुषाणामकर्ज्योतिर्बाधमाना तमांसि ॥१॥

उषादेवी तरुणी पत्नीजस्ती हुनाले सूर्यदेव पतिका रूपमा प्रकट हुनुभन्दा पहिले नै संसारका प्राणीहरूलाई कर्म गर्ने प्रेरणा जागृत गराउने शक्ति सूर्यबाट प्राप्त गर्दछिन्। यस्ता बेलामा मानिसहरू अग्निदेवलाई प्रदीप्त गरुन्। अग्निदेव प्रसन्न भएर अन्धकार नष्ट गराउने ज्योति प्रकट गर्दछन्।

विश्वं प्रतीची सप्रथा उदस्थाद्रुशद्वासो बिभ्रती शुक्रमश्वैत्।
हिरण्यवर्णा सुदृशीकसन्दृग्गवां माता नेत्र्यह्नामरोचि ॥२॥

सर्वप्रसिद्ध देवी उषा जगत्का सम्मुख उदाएर तेजले पूर्ण सेतो वस्त्र धारण गर्दै अघि आउँदै छिन्। सुनको रङ्गजस्तो तेज भएकी, सुन्दर किरणकी माता र दिवसलाई नेतृत्व गर्ने देवी उषा अत्यधिक सुशोभित भइरहेकी छिन्।

देवानां चक्षुः सुभगा वहन्ती श्वेतं नयन्ती सुदृशीकमश्वम्।
उषा अदर्शि रश्मिभिर्व्यक्ता चित्रामघा विश्वमनु प्रभूता ॥३॥

देवताको नेत्रज्योति धारण गर्ने, सौभाग्यशालिनी, विलक्षण धनले सम्पन्न, सुन्दर सेतो वर्णका किरणले बढ्दै गरेकी उषा विश्वमा अझ धेरै प्रभाशाली हुँदै छिन्।

अन्तिवामा दूरे अमित्रमुच्छोर्वी गव्यूतिमभयं कृधी नः।
यावय द्वेष आ भरा वसूनि चोदय राधो गृणते मघोनि ॥४॥

हे उषादेवी ! तिमी प्रकाशित भएर, हामीसित द्वेष गर्ने शत्रु पर भगाऊ र हाम्रा गाईको उपयोगक्षेत्र भयरहित बनाऊ। हे धनसम्पन्न उषादेवी ! स्तोतालाई धन प्रदान गर।

अस्मे श्रेष्ठेभिर्भानुभिर्वि भाह्युषो देवि प्रतिरन्ती न आयुः।
इषं च नो दधती विश्ववारे गोमदश्वावद्रथवच्च राधः ॥५॥

हे उषादेवी ! तिमी हाम्रा लागि हितकारी सूर्यका रश्मिसहित प्रकाशित भएर हाम्रो आयु बढाऊ। हामीलाई गाई, अश्व र रथका साथै पर्याप्त धन प्रदान गर।

यां त्वा दिवो दुहितर्वर्धयन्तुषः सुजाते मतिभिर्वसिष्ठाः।
सास्मासु धा रयिमृष्वं बृहन्तं यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

हे उषादेवी ! तिमी द्युलोककी कुलीन पुत्री हौ। वसिष्ठ ऋषिहरूले स्तुति गर्दछन्। हामीलाई उपयोगी र महत्त्वपूर्ण धन प्रदान गर। तिमी हाम्रो पालन गरेर कल्याण गर।

[सूक्त - ७८]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - उषा। छन्द - त्रिष्टुप्।

प्रति केतवः प्रथमा अदृश्रन्नूर्ध्वा अस्या अञ्जयो वि श्रयन्ते।
उषो अर्वाचा बृहता रथेन ज्योतिष्मता वाममस्मभ्यं वक्षि ॥१॥

यी देवीको पहिलो झन्डाका रूपमा किरणको समूह देखिँदै छ। उनको गतिशील किरणले उच्च भागको आश्रय लिन्छ। हे उषादेवी ! हाम्रा लागि तिमी तेजयुक्त रथमा धन लिएर आऊ।

प्रति षीमग्निर्जरते समिद्धः प्रति विप्रासो मतिभिर्गृणन्तः।
उषा याति ज्योतिषा बाधमाना विश्वा तमांसि दुरिताप देवी ॥२॥

अग्निदेव समिधाले सर्वत्र प्रदीप्त हुन्छन्। ज्ञानीहरू स्तोत्रले स्तुति गर्दै देवत्वतर्फ अघि सर्दछन्। उषादेवी सबै अन्धकाररूपी पाप परास्त गर्दै जान्छिन्।

एता उ त्याः प्रत्यदृश्रन् पुरस्ताज्ज्योतिर्यच्छन्तीरुषसो विभातीः।
अजीजनन्त्सूर्यं यज्ञमग्निमपाचीनं तमो अगादजुष्टम् ॥३॥

आभासम्पन्न एवं तेजस्वी उषाहरूको पहिलो दर्शन पूर्व दिशामा हुन्छ। उषाकालमै सूर्यदेव, अग्निदेव र यज्ञदेव प्रकट हुन्छन्। यिनको तेजले ओरालो लाग्न रुचाउने र अप्रिय अन्धकार नष्ट हुन्छ।

अचेति दिवो दुहिता मघोनी विश्वे पश्यन्त्युषसं विभातीम्।
आस्थाद्रथं स्वधया युज्यमानमा यमश्वासः सुयुजो वहन्ति ॥४॥

हे धनले सम्पन्न उषादेवी तिमी द्युलोककी पुत्रीका रूपमा प्रसिद्ध छौ। अन्नले भरिएको रथमा आरुढ भएकी उषादेवीलाई सबैले देख्छन्। राम्रोसँग सधाएर नारिएका अश्वले त्यो रथ लैजान्छन्।

प्रति त्वाद्य सुमनसो बुधन्तास्माकासो मघवानो वयं च।
तिल्विलायध्वमुषसो विभातीर्यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

हे उषादेवी ! धनी र बुद्धिमान्का साथै हामी सबैले तिमीलाई चिनेका छौं। तिमी प्रकाशित भएर संसार स्नेहयुक्त गराऊ। कल्याणकारी साधनले सधैं हाम्रो रक्षा गर।

[सूक्त - ७९]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - उषा। छन्द - त्रिष्टुप्।

व्युषा आवः पथ्या३ जनानां पञ्च क्षितीर्मानुषीर्बोधयन्ती।
सुसन्दृग्भिरुक्षभिर्भानुमश्रेद्वि सूर्यो रोदसी चक्षसावः ॥१॥

मानिसका लागि हितैषि उषादेवी अन्धकार नष्ट गराउँदै पाँचै थरी मानिसलाई सूर्यमा आश्रित, उत्तम र तेजस्वी रश्मिले जगाउँछिन्। सूर्यदेव आफ्ना तेज द्यावापृथिवीमा भरिपूर्ण गराउँछन्।

व्यञ्जते दिवो अन्तेष्वक्तून्विशो न युक्ता उषसो यतन्ते।
सं ते गावस्तम आ वर्तयन्ति ज्योतिर्यच्छन्ति सवितेव बाहू॥२॥

उषादेवीहरू आफ्नो तेज अन्तरिक्षमा फैलाउँछन् र प्रजाकै झैं आपसमा मिलेर अन्धकार विनाश गर्ने प्रयास गर्दछन्। सूर्यदेवकै जस्तो उषाहरू प्रकाशयुक्त बाहु फैलाउँछन्।

अभूदुषा इन्द्रतमा मघोन्यजीजनत् सुविताय श्रवांसि।
वि दिवो देवी दुहिता दधात्याङ्गिरस्तमा सुकृते वसूनि॥३॥

धनऐश्वर्यले सम्पन्न श्रेष्ठ स्वामिनी उषा प्रकट भएर सबैका निम्ति हितकारी अन्न उत्पन्न गरिन्। द्युलोककी पुत्री तेजस्विनी उषादेवी श्रेष्ठ कर्म गर्नेहरूलाई धन प्रदान गर्दछिन्।

तावदुषो राधो अस्मभ्यं रास्व यावत्स्तोतृभ्यो अरदो गृणाना।
यां त्वा जज्ञुर्वृषभस्या रवेण विदृळहस्य दुरो अद्रेरौर्णोः॥४॥

हे उषादेवी ! तिमीले पहिले स्तोतालाई प्रदान गरेको जस्तै धन खुसी भएर हामीलाई पनि देऊ। साँढेको डुक्राइजस्तो टडकारो स्तोत्रको शब्द सुनेपछि हामी तिमीलाई चिन्दछौं। तिमीले पर्वतका किल्लाका बलिया ढोका खोलिदियौ।

देवंदेवं राधसे चोदयन्त्यस्मद्रयक्सूनृता ईरयन्ती।
व्युच्छन्ती नः सनये धियो धा यूयं पात स्वस्तिभिः सदा नः॥५॥

हे उषादेवी ! तिमी स्तोतालाई धनका लागि र हामीलाई सत्य बोलीका लागि प्रेरित गर्दछौ। तिमी अन्धकार नाश गर्दछौ। हामीलाई धन प्रदान गर्नका लागि तिमी बुद्धि स्थिर गराऊ। कल्याणकारी साधनहरूले तिमी हाम्रो पालन गर।

[सूक्त - ८०]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - उषा। छन्द - त्रिष्टुप्।

प्रति स्तोमेभिरुषसं वसिष्ठा गीर्भिर्विप्रासः प्रथमा अबुध्रन्।
विवर्तयन्तीं रजसी समन्ते आविष्कृण्वतीं भुवनानि विश्वा॥१॥

वसिष्ठ गोत्रका ज्ञानी ऋषिहरू सर्वप्रथम स्तोत्रले स्तुति गर्दै उषादेवीलाई जगाउँछन्। उषादेवी उत्तिकै क्षेत्रफल भएका द्यावापृथिवी र सबै प्राणीलाई प्रकाश भरिदिन्छिन्।

एषा स्या नव्यमायुर्दधाना गूढ्वी तमो ज्योतिषोषा अबोधि।
अग्र एति युवतिरह्रयाणा प्राचिकितत्सूर्यं यज्ञमग्निम्॥२॥

आफ्ना तेजले तरुण भएर निस्पट्ट अन्धकार पर हटाउने उषादेवी यिनै हुन्। नयाँ दुलहीको जस्तो धक नमानेर उषादेवी सूर्यभन्दा अगाडि आउँछिन्। तिनी सूर्य, यज्ञ र अग्निको सूचना दिन्छिन्।

अश्वावतीर्गोमतीर्न उषासो वीरवतीः सदमुच्छन्तु भद्राः।
घृतं दुहाना विश्वतः प्रपीता यूयं पात स्वस्तिभिः सदा नः॥३॥

अनेकौं घोडा र गाई भएकी उषादेवी घिउ र दुध सधैं बढाइदिन्छिन्। हे उषादेवी ! हामीलाई तिमी कल्याणकारी साधनले पालन गर।

[सूक्त - ८१]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - उषा। छन्द - प्रगाथ।

प्रत्यु अदर्श्यायत्यु१च्छन्ती दुहिता दिवः।
अपो महि व्ययति चक्षसे तमो ज्योतिष्कृणोति सूनरी॥१॥

द्युलोककी पुत्री, अन्धकार नष्ट गर्ने उषादेवी देखिँदै छिन्। उनी अन्धकार हटाएर सबैले सबै कुरो देखून् भन्दै प्रकाश फिँजाउँछिन्।

उदुस्रियाः सृजते सूर्यः सचाँ उद्यन्नक्षत्रमर्चिवत्।
तवेदुषो व्युषि सूर्यस्य च सं भक्तेन गमेमहि॥२॥

सूर्यदेव उदाउभन्दा पहिले नक्षत्र प्रकट हुन्छन्। सूर्यदेव रश्मि एकैसाथ छर्दछन्। हे उषादेवी ! तिमी र सूर्यदेव प्रकाशित हुँदा हामीलाई उत्तम अन्न प्राप्त होस्।

प्रति त्वा दुहितर्दिव उषो जीरा अभुत्स्महि।
या वहसि पुरु स्पार्हं वनन्वति रत्नं न दाशुषे मयः॥३॥

द्युलोककी पुत्री हे उषादेवी ! हामी चाँडै काम गरेर तिमीलाई जगाउँछौं। हे धनकी अधिपति देवी ! तिमी यजमानको सुखका लागि धेरै गतिलो धन प्रदान गर्दछौ।

उच्छन्ती या कृणोषि मंहना महि प्रख्यै देवि स्वर्दृशे।
तस्यास्ते रत्नभाज ईमहे वयं स्याम मातुर्न सूनवः ॥४॥

हे उषादेवी ! तिमी अन्धकार नाश गरेर आफ्नो महत्त्व प्रदर्शित गर्दछ्यौ। रत्नले सम्पन्न तिमी संसारले देख्न सकोस् भनेर प्रकाश दिन्छ्यौ। आमाले छोरो पालेझैं तिमी पनि हामीलाई पोषित गर।

तच्चित्रं राध आ भरोषो यद्दीर्घश्रुत्तमम्।
यत्ते दिवो दुहितर्मर्तभोजनं तद्रास्व भुनजामहै ॥५॥

हे उषादेवी ! हामीलाई यश बढ्ने धन देऊ। हे स्वर्गलोकको पुत्री उषादेवी ! तिमी आफ्नो मानवोचित भोग्य अन्न हामीलाई प्रदान गर।

श्रवः सूरिभ्यो अमृतं वसुत्वनं वाजाँ अस्मभ्यं गोमतः।
चोदयित्री मघोनः सूनृतावत्युषा उच्छदप स्रिधः ॥६॥

हे उषादेवी तिमी आफ्ना स्तुतिकर्तालाई अक्षय धन र यश प्रदान गर। हामी सबैलाई गाई र अन्न प्रदान गर। सत्य बोल्न र यज्ञीय कर्म गर्नका लागि प्रेरणा दिने हे उषादेवी ! तिमी शत्रुको नाश गर।

[सूक्त – ८२]

**ऋषि** – वसिष्ठ मैत्रावरुणि। **देवता** – इन्द्रावरुण। **छन्द** – जगती।

इन्द्रावरुणा युवमध्वराय नो विशे जनाय महि शर्म यच्छतम्।
दीर्घप्रयज्युमति यो वनुष्यति वयं जयेम पृतनासु दूढ्यः ॥१॥

हे इन्द्रदेव र वरुणदेव ! तिमीहरू दुवै हाम्रा प्रजालाई यज्ञ कर्म गर्न विशाल गृह प्रदान गर। तिमीहरूका कृपाले महान् युद्धमा यज्ञकर्तालाई दुःख दिने बलिया शत्रु जितौं।

सम्राळन्यः स्वराळन्य उच्यते वां महान्ताविन्द्रावरुणा महावसू।
विश्वे देवासः परमे व्योमनि सं वामोजो वृषणा सं बलं दधुः ॥२॥

महत्त्वपूर्ण धनका स्वामी हे महान् इन्द्र र वरुणदेव ! तिमीहरूमध्ये एउटा स्वराट् र अर्को सम्राट् हौ। कामना पूर्ति गराउने तिमीहरू दुवैलाई उच्च आकाशमा विश्वेदेवले तेज र बल प्रदान गरेका छन्।

अन्वपां खान्यतृन्तमोजसा सूर्यमैरयतं दिवि प्रभुम्।
इन्द्रावरुणा मदे अस्य मायिनोऽपिन्वतमपितः पिन्वतं धियः ॥३॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू दुवैले सर्वप्रेरक सवितादेवलाई आकाशमा गमन गर्नका लागि प्रेरित गरेका छौ। तिमीहरू आफ्ना सामर्थ्यले जल वर्षा गराउँछौ। शक्तिवर्द्धक सोमपान गरेर तिमीहरूले नदीलाई जलपूर्ण गरेर हाम्रा सत्कर्महरू पूरा गरायौ।

युवामिद्युत्सु पृतनासु वह्नयो युवां क्षेमस्य प्रसवे मितज्ञवः।
ईशाना वस्व उभयस्य कारव इन्द्रावरुणा सुहवा हवामहे ॥४॥

हे इन्द्र र वरुणदेव ! ज्ञानी योद्धाहरू सङ्ग्रामका समयमा घुँडा टेक्दै सुरक्षाका आशाले तिमीहरूलाई पुकार्दछन्। दिव्यलोक र पृथिवीका धनका स्वामी सरलतासाथ पुकार सुनिदिने तिमीहरूलाई हामी स्तोताहरू पनि सहायताका लागि पुकार्दछौं।

इन्द्रावरुणा यदिमानि चक्रथुर्विश्वा जातानि भुवनस्य मज्मना।
क्षेमेण मित्रो वरुणं दुवस्यति मरुद्भिरुग्रः शुभमन्य ईयते ॥५॥

हे इन्द्र र वरुणदेव ! तिमीहरूले जगत्का समस्त प्राणीको सृष्टि गरेका छौ। लोक कल्याणका लागि सक्रिय वरुणदेवको सहयोग मित्रदेवले गर्दछन्। अर्का इन्द्रदेव चाहिँ मरुत्हरूसँग तेजस्वी र सुशोभित हुन्छन्।

महे शुल्काय वरुणस्य नु त्विष ओजो मिमाते ध्रुवमस्य यत्स्वम्।
अजामिमन्यः श्नथयन्तमातिरद्दभ्रेभिरन्यः प्र वृणोति भूयसः ॥६॥

इन्द्र र वरुणदेव महान् सम्पत्तिरूपी स्वयंको स्थायी बल बढाउँदै तेजस्वी हुन्छन्। यिनीहरूको यस्तो बल नित्य र असामान्य छ। वरुणदेव हिंसक शत्रु नाघेर जान्छन् भने अर्का इन्द्रदेव चाहिँ अलिकति साधनले पनि अनेकौं शत्रुलाई बाधा हालिदिन्छन्।

न तमंहो न दुरितानि मर्त्यमिन्द्रावरुणा न तपः कुतश्चन।
यस्य देवा गच्छथो वीथो अध्वरं न तं मर्तस्य नशते परिह्वृतिः ॥७॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू जसका यज्ञमा पुग्दछौ र जसको तिमीहरू कल्याण गर्न चाहन्छौ, त्यस मानिसका पाप, दुःखपिर र दुष्ट कर्मले हानी गराउन सक्दैनन्। तिनीहरू तिमीहरूका कृपाले नै सुरक्षित रहन्छन्।

अर्वाङ्नरा दैव्येनावसा गतं शृणुतं हवं यदि मे जुजोषथः।
युवोर्हि सख्यमुत वा यदाप्यं मार्डीकमिन्द्रावरुणा नि यच्छतम् ॥८॥

हे इन्द्रदेव र वरुणदेव ! तिमीहरू हाम्रा स्तोत्र सुन र यदि प्रसन्न भयौ भनेदेखि हाम्रा नजिकै आएर हामीलाई दिव्य संरक्षण प्रदान गर। तिमीहरू दुवै मित्रता, बन्धुत्व र सुखका साधन हामीलाई प्रदान गर।

अस्माकमिन्द्रावरुणा भरेभरे पुरोयोधा भवतं कृष्ट्योजसा।
यद्वां हवन्त उभये अध स्पृधि नरस्तोकस्य तनयस्य सातिषु ॥९॥

आफ्ना बलले शत्रु लछार्ने हे इन्द्रदेव र वरुणदेव ! लडाइँका मैदानमा हाम्रो नेतृत्व गर। प्राचीन र आधुनिक दुवै समयका मानिसहरू युद्धमा विजय, पुत्रपौत्रादि र सुख प्राप्ति गर्ने कामनाले तिमीहरूलाई आह्वान गर्दछन्।

अस्मे इन्द्रो वरुणो मित्रो अर्यमा द्युम्नं यच्छन्तु महि शर्म सप्रथः।
अवध्रं ज्योतिरदितेर्ऋतावृधो देवस्य श्लोकं सवितुर्मनामहे ॥१०॥

इन्द्रदेव, वरुणदेव, मित्रदेव र अर्यमादेवले हामीलाई विशाल आवास, धन र सुख प्रदान गरुन्। यज्ञ बढाउने देवी अदितिका तेजले हामीलाई पालन गरोस्। हामी सबैले सवितादेवको स्तुति गर्दछौं।

[सूक्त - ८३]

ऋषि – वसिष्ठ मैत्रावरुणि। देवता – इन्द्रावरुण। छन्द – जगती।

युवां नरा पश्यमानास आप्यं प्राचा गव्यन्तः पृथुपर्शवो ययुः।
दासा च वृत्रा हतमार्याणि च सुदासमिन्द्रावरुणावसावतम् ॥१॥

हे इन्द्र र वरुणदेव ! गाई पाउने इच्छाले परशु धारण गर्दै बन्धुभावले हेर्नेलाई उन्नतितर्फ लैजाओ। दास, वृत्र र सुदासका शत्रु संहार गरेर आफ्ना भक्तको रक्षा गर।

यत्रा नरः समयन्ते कृतध्वजो यस्मिन्नाजा भवति किं चन प्रियम्।
यत्रा भयन्ते भुवना स्वर्दृशस्तत्रा न इन्द्रावरुणाधि वोचतम् ॥२॥

मानिसहरू आआफ्ना ध्वजा उचालेर यद्धको कोकोहोलो मच्चाउन एकत्रित भएपछि त्यहाँ युद्धले मानिसकै अहित गर्छ। हे इन्द्रदेव र वरुणदेव ! तिमीहरू सुखशान्तिजस्ता स्वर्गीय स्थितिका पक्षमा रहेका हुनाले हामीलाई सङ्ग्रामबाट जोगाओ।

सं भूम्या अन्ता ध्वसिरा अदृक्षतेन्द्रावरुणा दिवि घोष आरुहत्।
अस्थुर्जनानामुप मामरातयोऽर्वागवसा हवनश्रुता गतम् ॥३॥

युद्धमा पृथ्वीका सबै अन्न सेनाले नष्ट गर्दछन् र सङ्ग्रामका लागि तयार सैनिकको रुवाबासी आकाशमका गुँज्दछ। मानवताका शत्रु हाम्रा सामु आएका छन्। त्यसैले आह्वान सुनिदिने हे इन्द्र र वरुणदेव ! तिमीहरू हामीकहाँ आओ र सुरक्षा प्रदान गर।

इन्द्रावरुणा वधनाभिरप्रति भेदं वन्वन्ता प्र सुदासमावतम्।
ब्रह्माण्येषां शृणुतं हवीमनि सत्या तृत्सूनामभवत्पुरोहितिः ॥४॥

हे इन्द्र र वरुणदेव ! तिमीहरूले आफ्ना आयुधले भेद नामको शत्रु मार्‍यौ र आफ्ना भक्त सुदास राजाको सुरक्षा गर्‍यौ। युद्धकालमा तृत्सुको पुरोहित्याई सफल रह्यो, किनभने तिमीहरूले तिनको स्तोत्र सुन्यौ।

इन्द्रावरुणावभ्या तपन्ति माघान्यर्यो वनुषामरातयः।
युवं हि वस्व उभयस्य राजथोऽध स्मा नोऽवतं पार्ये दिवि ॥५॥

हे इन्द्र र वरुणदेव ! शत्रुका हतियार र हिंसक शत्रुले हामीलाई ज्यादै दुःख दिँदै छन्। दिव्य र पार्थिव दुवै धनका स्वामी हे इन्द्र र वरुणदेव ! सङ्ग्राममा हाम्रो रक्षा गर।

युवां हवन्त उभयास आजिष्विन्द्रं च वस्वो वरुणं च सातये।
यत्र राजभिर्दशभिर्निबाधितं प्र सुदासमावतं तृत्सुभिः सह ॥६॥

हे इन्द्र र वरुणदेव ! युद्धका समयमा सुदास र तृत्सु दुवै जना धन प्राप्तिका कामनाले तिमीहरू दुवैलाई आह्वान गर्दछन्। यस युद्धमा दस राजाहरूबाट पीडित सुदासलाई तृत्सुसहित तिमीहरूले रक्षा गर्‍यौ।

दश राजानः समिता अयज्यवः सुदासमिन्द्रावरुणा न युयुधुः।
सत्या नृणामद्मसदामुपस्तुतिर्देवा एषामभवन्देवहूतिषु ॥७॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू दुवैका संरक्षणमा रहने सुदास राजालाई यज्ञविहीन दस राजाले मिलेर पनि परास्त गर्न सकेनन्। हवि दान गर्नेका स्तोत्र र पाठ सफल भए। उनका यज्ञमा सबै देवताहरू उपस्थित थिए।

दाशराज्ञे परियत्ताय विश्वतः सुदास इन्द्रावरुणावशिक्षतम्।
श्वित्यञ्चो यत्र नमसा कपर्दिनो धिया धीवन्तो असपन्त तृत्सवः ॥८॥

हे इन्द्र र वरुणदेव ! दस जना राजाले मिलेर सुदासलाई चारै तिरबाट छेके। त्यस वेला तिमीहरूले बल प्रदान गरेर उनको रक्षा गरेका थियौ। किनभने त्यस देशमा निर्मल जटाधारी, ज्ञानी, तृत्सुहरू नमस्कारपूर्वक यज्ञकर्मको आचरण गर्दछन्।

वृत्राण्यन्यः समिथेषु जिघ्नते व्रतान्यन्यो अभि रक्षते सदा।
हवामहे वां वृषणा सुवृक्तिभिरस्मे इन्द्रावरुणा शर्म यच्छतम् ॥९॥

हे इन्द्र र वरुणदेव ! तिमीहरूमध्ये इन्द्रदेव सङ्ग्राममा शत्रुसंहारक हौ र वरुणदेव सधैं सत्कर्मका रक्षक हौ। अभीष्ट कामनाको वर्षा गराउने तिमीहरू दुवैलाई हामी स्तुतिले आह्वान गर्दछौं। हामीलाई सुखी बनाओ।

अस्मे इन्द्रो वरुणो मित्रो अर्यमा द्युम्नं यच्छन्तु महि शर्म सप्रथः।
अवध्रं ज्योतिरदितेर्ऋतावृधो देवस्य श्लोकं सवितुर्मनामहे ॥१०॥

इन्द्रदेव, वरुणदेव, मित्रदेव र अर्यमादेवले हामीलाई विशाल आवास, तेजस्वी धन र सुख प्रदान गरुन्। यज्ञ बढाउने अदिति देवीका तेजले हाम्रो पालन गरोस्। हामी सबै सवितादेवलाई स्तुति गर्दछौं।

[सूक्त - ८४]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्रावरुण। छन्द - त्रिष्टुप्।

आ वां राजानावध्वरे ववृत्यां हव्येभिरिन्द्रावरुणा नमोभिः।
प्र वां घृताची बाह्वोर्दधाना परि त्मना विषुरूपा जिगाति ॥१॥

हे इन्द्र र वरुणदेव ! स्तुति र आहुतिले यज्ञमा तिमीहरू दुवैलाई बोलाउँछौं। हातमा धारण गरेका विविध हवि र घिउले भरिएको जुहू पात्र स्वयं तिमीहरूतिर आउँछ।

युवो राष्ट्रं बृहदिन्वति द्यौर्यौ सेतृभिररज्जुभिः सिनीथः।
परि नो हेळो वरुणस्य वृज्या उरुं न इन्द्रः कृणवदु लोकम् ॥२॥

हे इन्द्र र वरुणदेव ! तिमीहरूको द्युलोकरूपी विशाल राष्ट्रले सबैलाई प्रसन्न गराउँछ। तिमीहरू डोरीविनाका बन्धनले पापीलाई बाँधिदेओ। वरुणदेवले हामीलाई सुरक्षित राखुन् अन्य दुष्टमाथि क्रोध गरुन् र इन्द्रदेव हाम्रा लागि क्षेत्रको विस्तार गरुन्।

कृतं नो यज्ञं विदथेषु चारुं कृतं ब्रह्माणि सूरिषु प्रशस्ता।
उपो रयिर्देवजूतो न एतु प्र णः स्पार्हाभिरूतिभिस्तिरेतम् ॥३॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू हाम्रा घरको यज्ञ उत्तम बनाइदेओ र स्तोतालाई प्रशंसित बनाओ। देवताहरूबाट प्रेरित धन हामीलाई प्राप्त होस्। प्रशंसनीय रक्षण साधनले उनीहरूले हाम्रो वृद्धि गरुन्।

अस्मे इन्द्रावरुणा विश्ववारं रयिं धत्तं वसुमन्तं पुरुक्षुम्।
प्र य आदित्यो अनृता मिनात्यमिता शूरो दयते वसूनि ॥४॥

हे इन्द्र र वरुणदेव ! हामी सबैका लागि राम्रो घर, अन्न र धन प्रदान गर। आदित्यले असत्य नष्ट गर्दछन्, उनै देवताले पराक्रमीलाई धनी बनाउँछन्।

इयमिन्द्रं वरुणमष्ट मे गीः प्रावत्तोके तनये तूतुजाना।
सुरत्नासो देववीतिं गमेम यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

इन्द्र र वरुणदेवसम्म हाम्रो स्तुति पुगोस् र तिनले पुत्रपौत्रादिसहित हाम्रो रक्षा गरुन्। हामी श्रेष्ठ रत्नले सम्पन्न भएर सात कर्मरूपी यज्ञ गरौं। उनीहरू आफ्ना कल्याणकारी संरक्षक शक्तिले हाम्रो पालन गरुन्।

[सूक्त - ८५]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्रावरुण। छन्द - त्रिष्टुप्।

पुनीषे वामरक्षसं मनीषां सोममिन्द्राय वरुणाय जुह्वत्।
घृतप्रतीकामुषसं न देवीं ता नो यामन्नुरुष्यतामभीके ॥१॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू दुवैको अराक्षसी बुद्धिको विचारलाई हामी वसिष्ठहरू उषादेवीले जस्तै पवित्र गराउँछौं। तेजस्वी स्तुति र सोमको आहुतिले तिमीहरू दुवैलाई प्रसन्न गर्दछौं। हामीलाई तिमीहरू सङ्ग्राममा रक्षा गर।

स्पर्धन्ते वा उ देवहूये अत्र येषु ध्वजेषु दिद्यवः पतन्ति।
युवं ताँ इन्द्रावरुणावमित्रान्हतं पराचः शर्वा विषूचः ॥२॥

शत्रु पक्ष र हाम्रा पक्षका वीरको परस्पर स्पर्द्धा भएका युद्धमा ध्वजामाथि पनि शस्त्र प्रहार हुन्छन्। हे इन्द्र र वरुणदेव ! तिमीहरू दुवै हिंस्रक आयुधले शत्रु नाश गर।

आपश्चिद्धि स्वयशसः सदःसु देवीरिन्द्रं वरुणं देवता धुः।
कृष्टीरन्यो धारयति प्रविक्ता वृत्राण्यन्यो अप्रतीनि हन्ति ॥३॥

यज्ञगृहमा तेजस्वी भएर इन्द्र र वरुण आदि देवताले दिव्य सोम धारण गरिएका छन्। वरुणदेव प्रजालाई छुट्टाछुट्टै धारण गर्दछन् र इन्द्रदेव अजेय शत्रु पनि नाश गर्दछन्।

स सुक्रतुर्ऋतचिदस्तु होता य आदित्य शवसा वां नमस्वान्।
आववर्तदवसे वां हविष्मानसदित्स सुविताय प्रयस्वान् ॥४॥

हे अदितिका पुत्रहरू हो ! तिमीहरू यज्ञको विधि राम्रोसित जान्दछौ। नमस्कार गर्दै सेवा गर्नेहरू हविष्यान्नले आहुति प्रदान गर्नका लागि आह्वान गर्दछन्। तिनले अन्नसँगै उत्तम फल प्राप्त गर्दछन्।

इयमिन्द्रं वरुणमष्ट मे गीः प्रावत्तोके तनये तूतुजाना।
सुरत्नासो देववीतिं गमेम यूयं पात स्वस्तिभिः सदा नः ॥५॥

इन्द्र र वरुणदेवसम्म हाम्रो स्तुति पुगोस् र तिनले पुत्रपौत्रादिसहित हाम्रो रक्षा गरुन्। हामी श्रेष्ठ रत्नले सम्पन्न भएर सात कर्मरूपी यज्ञ गरौं। उनीहरू आफ्ना कल्याणकारी संरक्षक शक्तिले हाम्रो पालन गरुन्।

[सूक्त - ८६]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - वरुण। छन्द - त्रिष्टुप्।

धीरा त्वस्य महिना जनूंषि वि यस्तस्तम्भ रोदसी चिदुर्वी।
प्र नाकमृष्वं नुनुदे बृहन्तं द्विता नक्षत्रं पप्रथच्च भूम ॥१॥

यी धैर्यवान् वरुणदेवको जन्म महिमायुक्त छ। यिनै देवताले विस्तृत द्यावापृथिवीलाई स्थिर गराएका हुन्। यी दिनमा सूर्य र रातमा नक्षत्रलाई प्रेरित गर्दछन्। यिनै देवताले भूमिलाई विस्तृत गराएका हुन्।

उत स्वया तन्वा३ सं वदे तत्कदा न्व१न्तर्वरुणे भुवानि।
किं मे हव्यमहृणानो जुषेत कदा मृळीकं सुमना अभि ख्यम् ॥२॥

के हामी यसै शरीरका साथ वरुणदेवसित कुरा गर्छौं ? वरुणदेव कहिले हामीसित होलान् ? हाम्रो आहुति वरुणदेव शान्तिपूर्वक स्वीकार गर्लान् ? हामी कहिले असल विचारवान् भएर वरुणदेवको दर्शन गरौंला ?

पृच्छे तदेनो वरुण दिदृक्षूपो एमि चिकितुषो विपृच्छम्।
समानमिन्मे कवयश्चिदाहुरयं ह तुभ्यं वरुणो हृणीते ॥३॥

हे वरुणदेव ! हामीले विभिन्न विद्वान्हरूसित सोध्दा उनीहरूले वरुणदेव रिसाएका छन् भने। त्यसरी रिसाउनुको कारण तिमीसित हामी सोध्छौं।

किमाग आस वरुण ज्येष्ठं यत्स्तोतारं जिघांससि सखायम्।
प्र तन्मे वोचो दूळभ स्वधावोऽव त्वानेना नमसा तुर इयाम् ॥४॥

हे वरुणदेव ! हामीले के बिराम गरेका छौं र तिमी हाम्रा मित्र स्तोतालाई मार्दछौ ? हे जित्न नसकिने तेजस्वी वरुणदेव ! हामीले गरेको पाप भनिदेऊ। त्यसको प्रायश्चित्त गरेर तिमीलाई फेरि हामी भेटौं।

वि द्रुग्धानि पित्र्या सृजा नोऽव या वयं चकृमा तनूभिः।
अव राजन्पशुतृपं न तायुं सृजा वत्सं न दाम्नो वसिष्ठम् ॥५॥

हे वरुणदेव ! हामी आफैंले गरेका र वंशमा भएका पाप तिमी मेटाइदेऊ। हे राजन् ! हे वरुणदेव ! चोरले प्रायश्चित्तस्वरूप पशुलाई घाँस खुवाएर, उनलाई सन्तुष्ट पारेपछि बाँधेको बाछो फुक्का भएझैं चोरीका पापबाट मुक्त हुन्छ। हामीलाई पनि त्यसैरी नै तिमी पापबाट मुक्त गराऊ।

न स स्वो दक्षो वरुण ध्रुतिः सा सुरा मन्युर्विभीदको अचित्तिः।
अस्ति ज्यायान्कनीयस उपारे स्वप्नश्चनेदनृतस्य प्रयोता ॥६॥

त्यस्तो पाप आफ्नै दोषबाट हुँदैन, बरु मदिरापान, रिस, जुवा र अज्ञानताले उत्पन्न हुन्छ। पापका क्षेत्रमा ज्यादा जानकार व्यक्तिले थोरै ज्ञान भएकालाई फँसाउँछ। त्यस्ता व्यक्तिको बानी बिग्रनाले सपनामा पनि पाप गर्नमै लागेका हुन्छ।

अरं दासो न मीळ्हुषे कराण्यहं देवाय भूर्णयेऽनागाः।
अचेतयदचितो देवो अर्यो गृत्सं राये कवितरो जुनाति ॥७॥

हे कामना पूरा गराउने वरुणदेव ! हामी निष्पाप भएपछि तिम्रो भक्ति गर्दछौं। हामी अज्ञानीलाई ज्ञान प्रदान गर। हे ज्ञानी वरुणदेव ! स्तोतालाई धनतर्फ प्रेरित गर।

अयं सु तुभ्यं वरुण स्वधावो हृदि स्तोम उपश्रितश्चिदस्तु।
शं नः क्षेमे शमु योगे नो अस्तु यूयं पात स्वस्तिभिः सदा नः ॥८॥

हे अन्नवान् वरुणदेव ! हाम्रा यस स्तोत्रले तिम्रा हृदयमा स्थान पाओस्। तिमी प्रसन्न भएर हाम्रो क्षेत्र र उपलब्धि कल्याणकारी बनाऊ। तिमी आफ्ना कल्याणकारी रक्षण साधनले सधैं हाम्रो पालन गर।

[सूक्त – ८७]

ऋषि – वसिष्ठ मैत्रावरुणि। देवता – वरुण। छन्द – त्रिष्टुप्।

रदत्पथो वरुणः सूर्याय प्रार्णांसि समुद्रिया नदीनाम्।
सर्गो न सृष्टो अर्वतीर्ऋतायञ्चकार महीरवनीरहभ्यः ॥१॥

वरुणदेवले सूर्यदेवका लागि मार्ग निर्धारण गरिदिएका छन्। समुद्रमा पुग्ने नदीलाई जलले भरिदिएका छन्। गतिशील फुर्तिला अश्व पानी बगेका नदीतर्फ गएझैं जान्छन्। द्रुतगामी सूर्यले रातलाई दिनबाट अलग्याएका छन्।

आत्मा ते वातो रज आ नवीनोत्पशुर्न भूर्णिर्यवसे ससवान्।
अन्तर्मही बृहती रोदसीमे विश्वा ते धाम वरुण प्रियाणि ॥२॥

हे वरुणदेव ! वायु तिम्रो आत्मा हो। यस वायुले जल चारैतिर पठाउँछ। घाँस खाएर पशु अन्न उत्पादक भएझैं संसारका पोषक वायु पनि त्यस्तै छन्। हे वरुणदेव ! महान् र विशाल द्यावापृथिवीका मध्य भागमा तिम्रा सबै ठाउँहरू लोकप्रिय छन्।

परि स्पशो वरुणस्य स्मदिष्टा उभे पश्यन्ति रोदसी सुमेके।
ऋतावानः कवयो यज्ञधीराः प्रचेतसो य इषयन्त मन्म ॥३॥

वरुणदेवका सबै अनुचरहरू प्रशंसनीय गति भएका छन्। उनी सुन्दर रूपमा रहेका द्यावापृथिवीको निरीक्षण गर्दछन्। उनी सत्कर्म गर्ने, यज्ञ गर्ने र प्रज्ञावान् ऋषिहरूका स्तोत्र निरीक्षण गर्दै लक्ष्यसम्म पुऱ्याउँछन्।

उवाच मे वरुणो मेधिराय त्रिः सप्त नामाघ्न्या बिभर्ति।
विद्वान्पदस्य गुह्या न वोचद्युगाय विप्र उपराय शिक्षन् ॥४॥

गाईका तीन गुना सात भेदका नाम हुन्छन् भन्ने गुप्त कुरो नजिकै आएर मजस्ता मेधावी शिष्यलाई शिक्षा दिँदै वरुणदेवले प्रकट गरेका छन्।

तिस्रो द्यावो निहिता अन्तरस्मिन्तिस्रो भूमीरुपराः षड्विधानाः।
गृत्सो राजा वरुणश्चक्र एतं दिवि प्रेङ्खं हिरण्ययं शुभे कम् ॥५॥

वरुणदेवका क्षेत्रभित्र द्युलोक र भूलोकका भागहरू पनि तीनतीन विभागमै छन्। यी छ प्रकार विभागहरू भनेका छ ऋतुहरू पनि हुन्। वरुण राजाले स्वर्णजस्तै वर्ण भएका सूर्यदेवलाई द्युलोकमा सबैको हितको रक्षा गर्नका लागि दीप्तिमान् बनाएका हुन्।

अव सिन्धुं वरुणो द्यौरिव स्थाद् द्रप्सो न श्वेतो मृगस्तुविष्मान्।
गम्भीरशंसो रजसो विमानः सुपारक्षत्रः सतो अस्य राजा ॥६॥

वरुणदेवले आकाशजस्तै समुद्रको स्थापना गरे। वरुणदेव सोमरसजस्तै छन्, शुभ्र वर्णका गौरमृगजस्तै बलवान् छन्। उनी आफ्ना अति प्रशंसनीय बलले अन्तरिक्षको निर्माण गर्ने, दुःखबाट पार लगाउने एक मात्र राजा हुन्।

यो मृडयाति चक्रुषे चिदागो वयं स्याम वरुणे अनागाः।
अनु व्रतान्यदितेर्ऋधन्तो यूयं पात स्वस्तिभिः सदा नः ॥७॥

वरुणदेव पापीलाई पनि प्रायश्चित्त गर्दा क्षमा गरेर सुख प्रदान गर्दछन्। उनै धनवान् वरुणदेवका नियम क्रमअनुसार संवर्द्धन गरेर निष्पाप हुँदै हामी उनैसित निवास गरौं। ती वरुणदेवले सधैं कल्याणकारी साधनद्वारा हाम्रो पालन गरुन्।

[सूक्त – ८८]

ऋषि – वसिष्ठ मैत्रावरुणि। देवता – वरुण। छन्द – त्रिष्टुप्।

प्र शुन्ध्युवं वरुणाय प्रेष्ठां मतिं वसिष्ठ मीळ्हुषे भरस्व।
य ईमर्वाञ्चं करते यजत्रं सहस्रामघं वृषणं बृहन्तम् ॥१॥

हे वसिष्ठ ! कामना पूर्ति गर्ने वरुणदेवका निम्ति शुद्ध र प्रिय स्तुति गर। वरुणदेव महान्, धनवान्, बलवान् र यजन गर्ने खालका छन्। वरुणदेवका कृपाले सूर्यदेव हाम्रा लागि प्रकट हुन्छन्।

अधा न्वस्य सन्दृशं जगन्वानग्नेरनीकं वरुणस्य मंसि।
स्वर्यदश्मन्नधिपा उ अन्धोऽभि मा वपुर्दृशये निनीयात् ॥२॥

सुन्दर पत्थरबाट निस्केको सोमरस वरुणदेवले प्रचुर मात्रामा पान गरेका बेला आफ्नो सुन्दर स्वरूप हामीलाई दर्शन गराउँछन्। हामी वरुणदेवका सुन्दर रूपको दर्शन गरेर अग्निदेवका ज्वालाको स्तुति गर्दछौं।

आ यद्रुहाव वरुणश्च नावं प्र यत्समुद्रमीरयाव मध्यम्।
अधि यदपां स्नुभिश्चराव प्र प्रेङ्ख ईङ्खयावहै शुभे कम् ॥३॥

हामी नौकामा वरुणदेवसँग बस्यौं। नौका समुद्रमा चलाइयो र अन्य नौकासँग सागरमा विचरण गऱ्यो। त्यस बेला हामीले हितकारी भुलामा भुलेर्झैं क्रीडाको आनन्द पायौं।

वसिष्ठं ह वरुणो नाव्याधादृषिं चकार स्वपा महोभिः।
स्तोतारं विप्रः सुदिनत्वे अह्नां यान्नु द्यावस्ततनन्यादुषासः ॥४॥

मेधावी वरुणदेवले आफ्ना सामर्थ्यले वसिष्ठलाई नौकामा चढाए। दिन र रात्रिलाई विस्तार गरेर स्तोता विप्र वसिष्ठ शुभ दिनमा ऋषि बनाइए।

क्व त्यानि नौ सख्या बभूवुः सचावहे यदवृकं पुरा चित्।
बृहन्तं मानं वरुण स्वधावः सहस्रद्वारं जगमा गृहं ते ॥५॥

हे वरुणदेव ! तिम्रो र हाम्रो मित्रता कहाँ भएको थियो ? उहिलेको हिंसारहित मित्रता हामी निर्वाह गर्दै छौं। हे अन्नवान् वरुणदेव ! हामी तिम्रा विशाल परिमाण भएका र सहस्र द्वार भएका घरमा जानेछौं।

य आपिर्नित्यो वरुण प्रियः सन्त्वामागांसि कृणवत्सखा ते।
मा त एनस्वन्तो यक्षिन् भुजेम यन्धि ष्मा विप्रः स्तुवते वरूथम् ॥६॥

हे वरुणदेव ! तिम्रा नित्य प्रिय बन्धु वसिष्ठले उहिले तिमीप्रति अपराध गरेका थिए, तर तिनी पनि तिम्रै मित्र हुन्। हे पूजनीय वरुणदेव ! हामी तिम्रै हौं, त्यसैले हामीलाई पापमुक्त गरेर उत्तम सुखदायी आवास प्रदान गर।

ध्रुवासु त्वासु क्षितिषु क्षियन्तो व्यस्मत् पाशं वरुणो मुमोचत्।
अवो वन्वाना अदितेरुपस्थाद्यूयं पात स्वस्तिभिः सदा नः॥७॥

हे वरुणदेव ! स्थायी भूप्रदेशमा रहँदै हामी तिम्रो स्तुति गर्दछौं। हामीलाई बन्धनबाट छुटाऊ। हामी अखण्ड सामर्थ्ययुक्त वरुणसित रक्षाको कामना गर्दछौं। कल्याणकारी साधनले हाम्रो सुरक्षा गर।

[सूक्त - ८९]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। देवता - वरुण। छन्द - गायत्री जगती।

मो षु वरुण मृन्मयं गृहं राजन्नहं गमम्। मृडा सुक्षत्र मृडय॥१॥

हे राजा वरुणदेव ! म सुन्दर घरमा बस्न पाऊँ, माटोमा होइन। सुन्दर धनले सम्पन्न वरुणदेवले हामीलाई सुखी बनाऊन्।

यदेमि प्रस्फुरन्निव दृतिर्न ध्मातो अद्रिवः। मृडा सुक्षत्र मृडय॥२॥

हे बलियो किल्लामा रहने देवता ! हामी हावा भरिएको छालाको खलातीझैं चल्दछौं। त्यसैले हे सुन्दर धन भएका देवता ! हामीलाई सुखी बनाऊ।

क्रत्वः समह दीनता प्रतीपं जगमा शुचे। मृडा सुक्षत्र मृडय॥३॥

हे धनवान् र पवित्र वरुणदेव ! हामीले दीनता र असमर्थताका कारण श्रौतस्मार्त कर्मको अवहेलना गरेका छौं, त्यसैले हामी दुःखी छौं। हे श्रेष्ठ क्षत्रिय स्वभाव भएका वरुणदेव ! हामीलाई तिमी आनन्दित गराऊ।

अपां मध्ये तस्थिवांसं तृष्णाविदज्जरितारम्। मृडा सुक्षत्र मृडय॥४॥

पानीको समुद्रमा रहेर पनि हामी तिर्खाएका छौं। हे क्षत्रिय बलले सम्पन्न तेज भएका देवता ! हामीलाई तिमी सुखी गराऊ, आनन्दित गराऊ।

यत्किं चेदं वरुण दैव्ये जनेऽभिद्रोहं मनुष्याश्चरामसि।
अचित्ती यत्तव धर्मा युयोपिम मा नस्तस्मादेनसो देव रीरिषः॥५॥

हे वरुणदेव ! मानिसबाट देवसमूहप्रति जुन अपकार अज्ञानताका वा असावधानीबाट भयो, ती पापका कारण हामीलाई क्षीण हुन नदेऊ।

[सूक्त - ९०]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। देवता - वायु इन्द्र। छन्द - त्रिष्टुप्।

प्र वीरया शुचयो दद्रिरे वामध्वर्युभिर्मधुमन्तः सुतासः।
वह वायो नियुतो याह्यच्छा पिबा सुतस्यान्धसो मदाय॥१॥

हे वायुदेव ! तिमी वीर छौ, त्यसैले तिमीलाई शुद्ध, मधुरतापूर्ण सोमरस अध्वर्युहरू प्रदान गर्दछन्। तिमी रथमा अश्व नियोजित गर, हाम्रोनजिक आऊ र यो अन्नरूपी सोमरस पान गर।

ईशानाय प्रहुतिं यस्त आनद शुचिं सोमं शुचिपास्तुभ्यं वायो।
कृणोषि तं मर्त्येषु प्रशस्तं जातोजातो जायते वाज्यस्य॥२॥

हे वायु ! तिमीलाई ईश्वरका रूपमा आहुति र पिउनका लागि शुद्ध सोमरस दिनेलाई मानिसहरूमा श्रेष्ठ बनाऊ। उसले सर्वत्र ऐश्वर्य र कीर्ति प्राप्त गरोस्।

राये नु यं जज्ञतू रोदसीमे राये देवी धिषणा धाति देवम्।
अध वायुं नियुतः सश्चत स्वा उत श्वेतं वसुधितिं निरेके॥३॥

वायुदेवलाई द्यावापृथिवीले ऐश्वर्यका लागि उत्पन्न गरे, उनलाई प्रकाशस्वरूपिणी स्तुतिले धनका निमित्त धारण गर्दछिन्। ती वायुदेव अश्वमा आफ्ना धनहीन भक्तकहाँ तेजस्वी धन प्रदान गर्नका लागि जान्छन्।

उच्छन्नुषसः सुदिना अरिप्रा उरु ज्योतिर्विविदुर्दीध्यानाः।
गव्यं चिदूर्वमुशिजो वि वव्रुस्तेषामनु प्रदिवः सस्रुरापः॥४॥

देवताहरूका लागि पापरहित उषा प्रकाशित भइन्। उनले देदीप्यमान भएर विशिष्ट ज्योति प्राप्त गरेकी छिन्। अङ्गिराहरूले गाईरूपी धन प्राप्त गरे र जलप्रवाहले उनको अनुसरण गरे।

ते सत्येन मनसा दीध्यानाः स्वेन युक्तासः क्रतुना वहन्ति।
इन्द्रवायू वीरवाहं रथं वामीशानयोरभि पृक्षः सचन्ते॥५॥

हे इन्द्र र वायुदेव ! तिमीहरू ईश्वर हौ। यजमानहरू निष्पाप मनले आफ्ना स्तुतिका प्रभावले यज्ञमा तिमीहरूलाई बोलाउँछन्। सबै अन्नहरूले तिमीहरूको सेवा गर्दछन्।

**ईशानासो ये दधते स्वर्णो गोभिरश्वेभिर्वसुभिर्हिरण्यैः।**
**इन्द्रवायू सूरयो विश्वमायुरर्वद्भिर्वीरैः पृतनासु सह्युः ॥६॥**

हे इन्द्र र वायुदेव ! हामीलाई गाई, अश्व र निवास आदि ऐश्वर्यले सुखी बनाउने सामर्थ्यवान् दाताले हाम्रो जीवन अश्व र वीरद्वारा शत्रुका बीचमा विजयी बनाउँछन्।

**अर्वन्तो न श्रवसो भिक्षमाणा इन्द्रवायू सुष्टुतिभिर्वसिष्ठाः।**
**वाजयन्तः स्ववसे हुवेम यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

अश्वको जस्तै हवि वहन गर्ने बल प्राप्त होस् भनेर वसिष्ठहरू उत्तम स्तुतिद्वारा हाम्रो संरक्षण गर्नका लागि इन्द्र र वायुदेवलाई बोलाउँछन्। उनीहरूले सधैं कल्याणकारी साधनले हाम्रो रक्षा गरून्।

[सूक्त - ९१]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - वायु इन्द्र। **छन्द** - त्रिष्टुप्।

**कुविदङ्ग नमसा ये वृधासः पुरा देवा अनवद्यास आसन्।**
**ते वायवे मनवे बाधितायावासयन्नुषसं सूर्येण ॥१॥**

प्राचीन कालमा वृद्ध स्तोताहरू वायुदेवको प्रिय स्तुति गरेका कारण प्रशंसित भएका थिए। उनीहरू कष्ट पाएका दुःखी मानिसको कल्याणका लागि वायुदेवलाई हवि प्रदान गर्ने बेलामा सूर्यदेवसँगै उषाको पनि प्रार्थना गर्दथे।

**उशन्ता दूता न दभाय गोपा मासश्च पाथः शरदश्च पूर्वीः।**
**इन्द्रवायू सुष्टुतिर्वामियाना मार्डीकमीट्टे सुवितं च नव्यम् ॥२॥**

हे रक्षा गर्ने इन्द्र र वायुदेव हो ! हामीलाई कष्ट नहुने गरी महिनौं वा वर्षौंसम्म तिमीहरू संरक्षण प्रदान गर। हाम्रो प्रार्थना सुनेर सुखदायक र सुविधाजनक धन प्रदान गर।

**पीवोअन्नाँ रयिवृधः सुमेधाः श्वेतः सिषक्ति नियुतामभिश्रीः।**
**ते वायवे समनसो वि तस्थुर्विश्वेन्नरः स्वपत्यानि चक्रुः ॥३॥**

उत्तम मेधा भएका, आफ्ना घोडाका आश्रयदाता, श्वेतवर्णका वायुदेव प्रचुर अन्नका धनी समृद्धलाई सन्तुष्ट गराउँछन्। ती नेतृत्व क्षमता भएका मानिस पनि एकै किसिमको मनले वायुदेवलाई यज्ञले उपासना गर्दछन्। वायुदेवले नै सुन्दर प्रजाको निर्माण गरे।

**यावत्तरस्तन्वो३ यावदोजो यावन्नरश्चक्षसा दीध्यानाः।**
**शुचिं सोमं शुचिपा पातमस्मे इन्द्रवायू सदतं बर्हिरेदम् ॥४॥**

हे इन्द्र र वायुदेव ! तिमीहरूका शरीरमा जति वेग र बल छ, जति नेतृत्वको क्षमताले सम्पन्न भएका व्यक्तिहरू प्रकट हुन्छन्, उसै रूपमा सोमपान गर। हे देवताहरू हो ! हाम्रा आसनमा बस र सोमपान गर।

**नियुवाना नियुतः स्पार्हवीरा इन्द्रवायू सरथं यातमर्वाक्।**
**इदं हि वां प्रभृतं मध्वो अग्रमध प्रीणाना वि मुमुक्तमस्मे ॥५॥**

हे मन पराइने गरेका इन्द्र र वायुदेव हो ! तिमीहरू आफ्ना अश्व एउटै रथमा खटाएर हामीकहाँ आओ। यो मधुर सोमको मुख्य भाग तिमीहरूकै लागि हो। यसलाई ग्रहण गरेर हामीलाई पापमुक्त गराओ।

**या वां शतं नियुतो याः सहस्रमिन्द्रवायू विश्ववाराः सचन्ते।**
**आभिर्यातं सुविदत्राभिरर्वाक्पातं नरा प्रतिभृतस्य मध्वः ॥६॥**

हे इन्द्र र वायुदेव ! तिमीहरूलाई सयौं अश्वले सेवा गरिरहेका छन्। सबैले स्वीकार गर्ने खालका हजारौं सङ्ख्याका अश्वले तिमीहरूको सेवा गरिरहेका छन्। असल धन प्रदान गर्ने उनै अश्वमा तिमीहरू हामीकहाँ आओ। हे नेतृत्व प्रदान गर्ने देवता हो ! तयार गरेर राखेको यो सोमरस तिमीहरू पान गर।

**अर्वन्तो न श्रवसो भिक्षमाणा इन्द्रवायू सुष्टुतिभिर्वसिष्ठाः।**
**वाजयन्तः स्ववसे हुवेम यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

अश्वले जस्तै हवि वहन गर्ने बल प्राप्त गर्ने इच्छाले वसिष्ठहरू उत्तम स्तुतिद्वारा हाम्रो संरक्षण गर्नका लागि इन्द्र र वायुदेवलाई बोलाउँछन्। उनीहरू सधैं कल्याणकारी साधनले हाम्रो रक्षा गरून्।

[सूक्त - ९२]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - वायु इन्द्र। छन्द - त्रिष्टुप्।

**आ वायो भूष शुचिपा उप नः सहस्रं ते नियुतो विश्ववार।**
**उपो ते अन्धो मद्यमयामि यस्य देव दधिषे पूर्वपेयम् ॥१॥**

हे पवित्र सोमपान गर्ने वायुदेव ! तिमी सबैबाट स्वीकार गरिन्छौ। तिमीसित हजारौं घोडा छन्। हामीकहाँ तिमी आऊ। तिमी पहिले जुन रस पान गर्दछौ, हामी तिम्रा लागि प्रसन्नतादायक त्यही सोमरस पात्रमा ल्याउँछौं।

**प्र सोता जीरो अध्वरेष्वस्थात् सोममिन्द्राय वायवे पिबध्यै।**
**प्र यद्वां अध्वो अग्रियं भरन्त्यध्वर्यवो देवयन्तः शचीभिः ॥२॥**

सोमबाट रस निकाल्नेजस्तो असल काम गर्ने अध्वर्युहरूले यज्ञमा इन्द्र र वायुदेवले पिउनका लागि सोमरस राखेका छन्। हे इन्द्र र वायु ! देवत्व प्राप्तिको कामनाले यस यज्ञमा कर्मद्वारा तिम्रा लागि अध्वर्युहरूले सोमको अघिल्लो भाग राखेका छन्।

**प्र याभिर्यासि दाश्वांसमच्छा नियुद्भिर्वायविष्टये दुरोणे।**
**नि नो रयिं सुभोजसं युवस्व नि वीरं गव्यमश्व्यं च राधः ॥३॥**

हे वायु ! तिमी यज्ञस्थलमा हव्यदाताका अगाडि अश्व लिएर जसरी जान्छौ, उसरी नै हामीकहाँ आऊ र हामीलाई असल अन्नले युक्त धन प्रदान गर। वीर पुत्र, गाई, अश्व आदि अनेकौं किसिमका ऐश्वर्य देऊ।

**ये वायव इन्द्रमादनास आदेवासो नितोशनासो अर्यः।**
**घ्नन्तो वृत्राणि सूरिभिः ष्याम सासह्वांसो युधा नृभिरमित्रान् ॥४॥**

स्तोताहरू इन्द्र र वायुको उपासना गर्दछन्। उनीहरू देवताको कृपा प्राप्त गरेर शत्रुविनाशक हुन्छन्। तिनका सहयोगले हामी पनि शत्रु दमन गर्नमा समर्थ होऔं।

**आ नो नियुद्भिः शतिनीभिरध्वरं सहस्रिणीभिरुप याहि यज्ञम्।**
**वायो अस्मिन्त्सवने मादयस्व यूयं पात स्वस्तिभिः सदा नः ॥५॥**

हे वायुदेव ! हाम्रा यस अहिंसक यज्ञमा तिमी आफ्ना सयौं हजार अश्वका रथमा आऊ र सोमरस पिएर खुसी होऊ। तिमी कल्याणकारी धनले सधैं हाम्रो रक्षा गर।

[सूक्त - ९३]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्राग्नी। छन्द - त्रिष्टुप्।

**शुचिं नु स्तोमं नवजातमद्येन्द्राग्नि वृत्रहणा जुषेथाम्।**
**उभा हि वां सुहवा जोहवीमि ता वाजं सद्य उशते धेष्ठा ॥१॥**

वृत्रहन्ता इन्द्र र अग्निदेव ! आज तिमीहरू आफ्नो शुद्ध र नवीन स्तोत्र सुन। श्रेष्ठ प्रशंसायोग्य देवता हुनाले तिमीहरूलाई हामी बारम्बार यज्ञमा बोलाउँछौं। उन्नतिको इच्छा गर्ने यजमानका लागि तिमीहरू अन्न र बलसामर्थ्य प्रदान गर।

**ता सानसी शवसाना हि भूतं साकंवृधा शवसा शूशुवांसा।**
**क्षयन्तौ रायो यवसस्य भूरेः पृङ्क्तं वाजस्य स्थविरस्य घृष्वेः ॥२॥**

हे इन्द्र र अग्निदेव ! तिमीहरू दुवै बलशाली र यजन गर्न योग्य छौ। तिमीहरू एकै साथ प्रवृद्ध भएर शत्रुनाशक र प्रभावशाली बन। तिमीहरू अन्नका अधिपति हौ, त्यसैले हामीलाई धेरै अन्न र शत्रुनाशक बल प्रदान गर।

**उपो ह यद्विदथं वाजिनो गुर्धीभिर्विप्राः प्रमतिमिच्छमानाः।**
**अर्वन्तो न काष्ठां नक्षमाणा इन्द्राग्नी जोहुवतो नरस्ते ॥३॥**

श्रेष्ठ बुद्धि प्राप्त गर्ने इच्छा भएका, अन्नवान् विप्रहरू यज्ञका लागि जान्छन् र नेतृत्व क्षमताले सम्पन्न, काठमा बस्ने चञ्चल ज्वालायुक्त इन्द्ररूपी अग्निको आह्वान गर्दछन्।

**गीर्भिर्विप्रः प्रमतिमिच्छमान ईट्टे रयिं यशसं पूर्वभाजम्।**
**इन्द्राग्नी वृत्रहणा सुवज्रा प्र नो नव्येभिस्तिरतं देष्णैः ॥४॥**

हे इन्द्र र अग्निदेव ! उत्तम बुद्धिको इच्छा गर्ने ज्ञानी पुरुष प्रथम उपभोग्य धनका लागि तिमीसित प्रार्थना गर्दछन्। शोभायमान आयुध भएका वृत्रहन्ता इन्द्र र अग्निदेव नवीन र दान योग्य धन हामीलाई प्रदान गरुन्।

सं यन्मही मिथती स्पर्धमाने तनूरुचा शूरसाता यतैते।
अदेवयुं विदथे देवयुभिः सत्रा हतं सोमसुता जनेन ॥५॥
युद्धमा परस्पर होड गर्ने विशाल शत्रुसेनाका बीचमा वीरले आफ्नो तेजद्वारा यशका लागि युद्ध गर्दछन्। यज्ञ गर्ने र देवत्व पाउन खोज्ने स्तोताका सहायताले देवताविरोधी व्यक्तिलाई नष्ट गरुन्।

इमामु षु सोमसुतिमुप न एन्द्राग्नी सौमनसाय यातम्।
नू चिद्धि परिमम्नाथे अस्माना वां शश्वद्भिर्ववृतीय वाजैः ॥६॥
हे इन्द्र र अग्निदेव ! मनको उत्तम भाव बढाउनका लागि सोमयज्ञमा आओ। हामीलाई त्याग्ने कुरो नसोच। हामी बारम्बार अन्नका लागि तिमीहरूको आह्वान गर्दछौं।

सो अग्न एना नमसा समिद्धोऽच्छा मित्रं वरुणमिन्द्रं वोचेः।
यत्सीमागश्चकृमा तत्सु मृड तदर्यमादितिः शिश्रथन्तु ॥७॥
हे अग्निदेव ! हविद्वारा प्रवृद्ध भएर, मित्र र वरुणदेवसित हाम्रो अपराध क्षमा गर्नका लागि भनिदेऊ। अर्यमा र अदितिसित हामीलाई पापबाट मुक्त गरिदेऊ पनि भन।

एता अग्न आशुषाणास इष्टीर्युवोः सचाभ्यश्याम वाजान्।
मेन्द्रो नो विष्णुर्मरुतः परि ख्यन्यूयं पात स्वस्तिभिः सदा नः ॥८॥
हे अग्निदेव ! हामी चाँडै नै यज्ञको आश्रय लिएर तिमीबाट तत्काल अन्न प्राप्त गरौं। विष्णु, इन्द्र र मरुत्‌हरूले कल्याणकारी साधनद्वारा हाम्रो सुरक्षा गरुन्।

## [सूक्त – ९४]

ऋषि – वसिष्ठ मैत्रावरुणि। देवता – इन्द्राग्नी। छन्द – गायत्री अनुष्टुप्।

इयं वामस्य मन्मन इन्द्राग्नी पूर्व्यस्तुतिः। अभ्राद्वृष्टिरिवाजनि ॥१॥
हे इन्द्र र अग्नि ! मेघले जल वर्साएझैं यो मनन गर्ने स्तोताका प्रथम स्तुति सुन।

शृणुतं जरितुर्हवमिन्द्राग्नी वनतं गिरः। ईशाना पिप्यतं धियः ॥२॥
हे इन्द्र र अग्निदेव ! उपासकको प्रार्थना सुन र उनका भनाइमा ध्यान देओ। तिमीहरू ईश्वर हौ, त्यसैले अनुष्ठान गरिएको कार्य सफल बनाओ।

मा पापत्वाय नो नरेन्द्राग्नी माभिशस्तये। मा नो रीरधतं निदे ॥३॥
हे नेतृत्व क्षमता भएका इन्द्र र अग्निदेव ! पापकर्मका लागि, अभिशप्त हुनका लागि अथवा निन्दाका लागि कहिल्यै पराधीन नगराओ।

इन्द्रे अग्ना नमो बृहत्सुवृक्तिमेरयामहे। धिया धेना अवस्यवः ॥४॥
हामी आफ्नो सुरक्षाका लागि इन्द्र र अग्निदेवसित प्रचुर हव्य र बुद्धिपूर्वक उत्तम वचनले सुन्दर स्तुति गान गर्दछौं।

ता हि शश्वन्त ईळत इत्था विप्रास ऊतये। सबाधो वाजसातये ॥५॥
रक्षणको इच्छा गर्ने इन्द्र र अग्निदेवलाई विद्वान् पुरुष प्रार्थना गर्दछन्। एकै किसिमले दुःख पाएकाहरू धनधान्य प्राप्तिका लागि उनीहरूको प्रशंसा गर्दछन्।

ता वां गीर्भिर्विपन्यवः प्रयस्वन्तो हवामहे। मेधसाता सनिष्यवः ॥६॥
विशिष्ट ज्ञानसम्पन्न, प्रयासरत र धनका अभिलाषी भएर हामी यज्ञमा दुवै देवताको प्रशंसा गर्दै तिमीहरूलाई आह्वान गर्दछौं।

इन्द्राग्नी अवसा गतमस्मभ्यं चर्षणीसहा। मा नो दुःशंस ईशत ॥७॥
हे शत्रुको सैन्यका घातक इन्द्र र अग्निदेव ! तिमीहरू अन्न आदि संरक्षणका साधनका साथमा हामीकहाँ आओ। हामी दुष्टबाट शासित नहोऔं।

मा कस्य नो अररुषो धूर्तिः प्रणङ् मर्त्यस्य। इन्द्राग्नी शर्म यच्छतम् ॥८॥
हे इन्द्र र अग्निदेव ! हामी शत्रुरूपी मानवबाट पीडित नहोऔं। हामीलाई सुख प्राप्त होस्, हामी सुखी होऔं।

गोमद्धिरण्यवद्वसु यद्वामश्वावदीमहे। इन्द्राग्नी तद्वनेमहि ॥९॥
हे इन्द्र र अग्निदेव ! तिमीहरूसित हामी गाई, अश्व, स्वर्णमय धन माग्दछौं, त्यो हामीले प्राप्त गर्न सकौं।

यत्सोम आ सुते नर इन्द्राग्नी अजोहवुः। सप्तीवन्ता सपर्यवः ॥१०॥

सोमरस पेलिएपछि याजकहरू उत्तम अश्व भएका इन्द्र र अग्निदेवको सेवा गर्ने विचारले बारम्बार उनीहरूलाई आह्वान गर्दछन्।

उक्थेभिर्वृत्रहन्तमा या मन्दाना चिदा गिरा। आङ्गूषैराविवासतः ॥११॥

वृत्रासुरको हत्या गर्ने, आनन्ददायी स्वभाव भएका इन्द्र र अग्निदेवलाई उत्तम स्तोत्रले उचित रूपमा हामी वन्दना गर्दछौं।

ताविद्दुःशंसं मर्त्यं दुर्विद्वांसं रक्षस्विनम्।
आभोगं हन्मना हतमुदधिं हन्मना हतम् ॥१२॥

इन्द्र र अग्नि दुवैले दुष्ट, दुर्गुणी विद्वान, राक्षसी स्वभाव भएका अपहरणकर्तालाई घातक शस्त्रले मारुन्। जल रोकेर राख्ने वृत्रलाई झैं उनीहरूलाई मारुन्।

[सूक्त - ९५]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - सरस्वती सरस्वान्। छन्द - त्रिष्टुप्।

प्र क्षोदसा धायसा सस्र एषा सरस्वती धरुणमायसी पूः।
प्रबाबधाना रथ्येव याति विश्वा अपो महिना सिन्धुरन्याः ॥१॥

जल साथमा लिएर बहने सरस्वती फलामे पर्खालझैं भएर रक्षा गर्दै छिन्। यी सरस्वती रथवाहक सारथीझैं अरूलाई बाधा गर्दै गतिशील छिन्।

एकाचेतत्सरस्वती नदीनां शुचिर्यती गिरिभ्य आ समुद्रात्।
रायश्चेतन्ती भुवनस्य भूरेर्घृतं पयो दुदुहे नाहुषाय ॥२॥

पवित्र चेतनाले युक्त प्रवाहमध्ये एक यी सरस्वती पर्वतबाट समुद्रसम्म जान्छिन्। यस लोकका धेरै श्रेष्ठ ऐश्वर्यलाई सचेष्ट गराउँदै सम्बन्धितहरूलाई दुधघिउ प्रदान गर्छिन्।

स वावृधे नर्यो योषणासु वृषा शिशुर्वृषभो यज्ञियासु।
स वाजिनं मघवद्भ्यो दधाति वि सातये तन्वं मामृजीत ॥३॥

मानिसहरूमा हितको वर्षा गर्ने सामर्थ्य भएको बलवान् शिशु सारस्वान् यज्ञमा योषित् छन्दरूपी जलधाराका माझमा हुर्कन्छ। यसले यज्ञकर्तालाई बलवान् पुत्र प्रदान गर्दछ। सबैको लाभका लागि शरीरको शोधन विशेष प्रकारले गराउँछ।

उत स्या नः सरस्वती जुषाणोप श्रवत् सुभगा यज्ञे अस्मिन्।
मितज्ञुभिर्नमस्यैरियाना राया युजा चिदुत्तरा सखिभ्यः ॥४॥

सौभाग्यप्रदायिनी सरस्वती यस यज्ञमा हाम्रो स्तुति सुनेर प्रसन्न हुन्छिन्। घुँडा टेकेर नमस्कार गर्नेहरू यिनका निकट जान्छन्। सरस्वती श्रेष्ठ धनसम्पन्न छिन् र मित्रताको भावनाले गर्दा दयालु छिन्।

इमा जुह्वाना युष्मदा नमोभिः प्रति स्तोमं सरस्वति जुषस्व।
तव शर्मन्प्रियतमे दधाना उपस्थेयाम शरणं न वृक्षम् ॥५॥

हे सरस्वती देवी ! हामी हव्यद्वारा यजन गरेर नमस्कारपूर्वक तिमीसित धेरै धन र अन्न प्राप्त गर्दछौं। तिमी हाम्रो प्रार्थना सुन। हामी तिम्रा अत्यन्त प्रिय आवासमा आश्रित रहेको वृक्षजस्तै बन्न सकौं।

अयमु ते सरस्वति वसिष्ठो द्वारावृतस्य सुभगे व्यावः।
वर्ध शुभ्रे स्तुवते रासि वाजान् यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

उत्तम भाग्यशाली हे सरस्वती देवी ! स्तोता वसिष्ठ ऋषि यज्ञको द्वार तिम्रा लागि खोल्दछन्। हे शुभ्र वर्ण भएकी देवी ! तिमी अघि सर र स्तोतालाई धन प्रदान गर। तिमी कल्याणकारी साधनले हाम्रो सुरक्षा गर।

[सूक्त - ९६]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - सरस्वती। छन्द - प्रगाथ प्रस्तारपंक्ति गायत्री।

बृहदु गायिषे वचोऽसुर्या नदीनाम्।
सरस्वतीमिन्महया सुवृक्तिभिः स्तोमैर्वसिष्ठ रोदसी ॥१॥

हे वसिष्ठ ! तिमी प्रवाहमा शक्तिशाली सरस्वतीका लागि महान् स्तोत्रको गाऊ। द्युलोक र पृथ्वीमा निवास गर्ने सरस्वतीलाई श्रेष्ठ स्तोत्रले वन्दना गरौं।

उभे यत्ते महिना शुभ्रे अन्धसी अधिक्षियन्ति पूरवः ।
सा नो बोध्यवित्री मरुत्सखा चोद राधो मघोनाम् ॥२॥

हे शुभ्र वर्णा सरस्वती देवी ! तिम्रा कृपाले मानिसले दिव्य र पार्थिव अन्न प्राप्त गर्छन्। हाम्रो रक्षा गर। मरुत्‌हरूसित मैत्री गर्ने नदीले हविदातालाई धनले परिपूर्ण गराऊन्।

भद्रमिद्भद्रा कृणवत्सरस्वत्यकवारी चेतति वाजिनीवती ।
गृणाना जमदग्निवत्स्तुवाना च वसिष्ठवत् ॥३॥

हितकारिणी सरस्वती निश्चित रूपले कल्याण गर्दछिन्। सुन्दर प्रवाहमान र अन्न प्रदान गर्ने सरस्वती देवीले हामीलाई सचेत बनाऊन्। जमदग्नि ऋषिबाट पूजित भएझैं तिमी वसिष्ठका लागि पनि स्तुत्य छ्यौ।

जनीयन्तो न्वग्रवः पुत्रीयन्तः सुदानवः । सरस्वन्तं हवामहे ॥४॥

स्त्री र पुत्र प्राप्तिको इच्छा गर्ने हामी श्रेष्ठ दान दाताहरूमा अग्रसर हुँदै सरस्वान्‌लाई आह्वान गर्दछौं।

ये ते सरस्व ऊर्मयो मधुमन्तो घृतश्चुतः । तेभिर्नोऽविता भव ॥५॥

हे सरस्वान् ! तिमी मधुर र घिउजस्ता तरङ्गले हाम्रो रक्षा गर।

पीपिवांसं सरस्वतः स्तनं यो विश्वदर्शतः । भक्षीमहि प्रजामिषम् ॥६॥

हामी स्तनपान गरेझैं समस्त ज्ञानका खानी सरस्वान्‌को धारा पान गरौं र श्रेष्ठ सन्तति एवं धनधान्य प्राप्त गरौं।

[सूक्त - ९७]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - बृहस्पति इन्द्र ब्रह्मणस्पती। **छन्द** - त्रिष्टुप्।

यज्ञे दिवो नृषदने पृथिव्या नरो यत्र देवयवो मदन्ति।
इन्द्राय यत्र सवनानि सुन्वे गमन्मदाय प्रथमं वयश्च ॥१॥

देवत्व कामना गर्ने, नेतृत्व क्षमताले युक्त मानिस जहाँ आनन्दित हुन्छन्, जुन यज्ञमा सोमरस इन्द्रदेवका लागि पेलेर तयार गरिन्छ, सम्पूर्ण मानवको कल्याण गर्ने त्यस यज्ञमा सर्वप्रथम इन्द्रदेव शीघ्रगामी अश्वमा अन्तरिक्षबाट आऊन्।

आ दैव्या वृणीमहेऽवांसि बृहस्पतिर्नो मह आ सखायः ।
यथा भवेम मीढ्हुषे अनागा यो नो दाता परावतः पितेव ॥२॥

हे मित्रहरू हो ! हामी संरक्षणका लागि देवतालाई स्तुति गर्दछौं। बृहस्पतिदेवले हाम्रो हव्य स्वीकार गरुन्। दूर देशबाट पिताले धन ल्याएर पुत्रलाई दिएझैं उनले हामीलाई धन प्रदान गर्दछन्। त्यसैले उनका समक्ष निष्पाप भएर श्रेष्ठ आचरणपूर्वक जाऔं।

तमु ज्येष्ठं नमसा हविर्भिः सुशेवं ब्रह्मणस्पतिं गृणीषे।
इन्द्रं श्लोको महि दैव्यः सिषक्तु यो ब्रह्मणो देवकृतस्य राजा ॥३॥

हामी हव्यसँगै नमस्कार गर्दै श्रेष्ठ र सेवनीय ब्रह्मणस्पतिदेवको प्रार्थना गर्दछौं। दिव्य मन्त्रले महान् इन्द्रदेवको स्तुति गरौं। देवताले बनाएको स्तोत्र स्तोत्रहरूको राजा हो।

स आ नो योनिं सदतु प्रेष्ठो बृहस्पतिर्विश्ववारो यो अस्ति।
कामो रायः सुवीर्यस्य तं दात्पर्षन्नो अति सश्चतो अरिष्टान् ॥४॥

हे सबैले वरण गर्न योग्य बृहस्पतिदेव ! यस यज्ञमा आऊ हाम्रा श्रेष्ठ धन र शक्तिको इच्छा पूरा गराऊ। हामीलाई बाधाबाट मुक्त गराऊ, हाम्रा शत्रु नाश गरिदेऊ।

तमा नो अर्कममृताय जुष्टमिमे धासुरमृतासः पुराजाः ।
शुचिक्रन्दं यजतं पस्त्यानां बृहस्पतिमनर्वाणं हुवेम ॥५॥

गृहस्थका पूज्य, परम पवित्र, सधैंका अग्रगामी बृहस्पतिदेलाई हामी प्रार्थना गर्दछौं। उहिल्यै उत्पन्न भएका अमर देवताले अमरता प्राप्त गर्ने योग्य अन्न प्रदान गरुन्।

तं शग्मासो अरुषासो अश्वा बृहस्पतिं सहवाहो वहन्ति।
सहश्चिद्यस्य नीलवत्सधस्थं नभो न रूपमरुषं वसानाः ॥६॥

सुखदायी, देदीप्यमान, सँगै लिएर हिँड्ने, सूर्यजस्तै तेजस्वी घोडाले बृहस्पतिदेवलाई वहन गरुन्। उनको बल अनन्त र निवास उत्तम छ।

स हि शुचिः शतपत्रः स शुन्ध्युर्हिरण्यवाशीरिषिरः स्वर्षाः।
बृहस्पतिः स स्वावेश ऋष्वः पुरू सखिभ्य आसुतिं करिष्ठः ॥७॥

बृहस्पतिदेव पवित्र, धेरै वाहन भएका, सबैलाई शुद्धता प्रदान गर्ने र स्वर्णजस्ता आयुध भएका छन्। उनको आवास उत्तम र दर्शनीय छ। उनले आफ्ना भक्तलाई सर्वाधिक अन्न प्रदान गर्दछन्।

देवी देवस्य रोदसी जनित्री बृहस्पतिं वावृधतुर्महित्वा।
दक्षाय्याय दक्षता सखायः करद् ब्रह्मणे सुतरा सुगाधा ॥८॥

बृहस्पतिदेवकी जननी द्यावापृथिवीले आफ्ना सामर्थ्यले उनलाई संवर्द्धित गर्दछिन्। हे मित्रहरू हो ! कुशल बृहस्पतिदेवलाई कुशलतासाथ हुर्काऊन्। ब्रह्मवृत्तिको विकास गर्नका लागि सुतरा भनिने श्रेष्ठ जीवनलाई सुगाधा भनिने असल गानयुक्त वेदवाणीले उत्पन्न गर्दछन्।

इयं वा ब्रह्मणस्पते सुवृक्तिर्ब्रह्मेन्द्राय वज्रिणे अकारि।
अविष्टं धियो जिगृतं पुरन्धीर्जजस्तमर्यो वनुषामरातीः ॥९॥

हे ब्रह्मणस्पतिदेव ! तिमी र वज्रधारी इन्द्रदेवका लागि हामी यो स्तोत्र पाठ गर्छौं। तिमी हाम्रा बौद्धिक अनुष्ठानको संरक्षण गर। अनेकौं प्रार्थना सुन र आफ्ना भक्तमाथि आक्रमण गर्ने सेनाको संहार गर।

बृहस्पते युवमिन्द्रश्च वस्वो दिव्यस्येशाथे उत पार्थिवस्य।
धत्तं रयिं स्तुवते कीरये चिद्यूयं पात स्वस्तिभिः सदा नः ॥१०॥

हे बृहस्पति र इन्द्रदेव ! तिमीहरू दुवै पृथ्वी र द्युलोकका ऐश्वर्यका स्वामी हौ। त्यसैले स्तोतालाई ऐश्वर्य प्रदान गर र कल्याणकारी साधनले हाम्रो सुरक्षा गर।

### [सूक्त - ९८]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र बृहस्पती। छन्द - त्रिष्टुप्।

अध्वर्यवोऽरुणं दुग्धमंशुं जुहोतन वृषभाय क्षितीनाम्।
गौराद्वेदीयाँ अवपानमिन्द्रो विश्वाहेद्याति सुतसोममिच्छन् ॥१॥

हे अध्वर्युहरू हो ! मानवमा श्रेष्ठ इन्द्रदेवका लागि पेलिएको रातो आभा भएको सोमरस हवन गरौं। टाढा रहेको, पिउन योग्य सोम टाढा गएर चिनौं र गौर मृगजस्तै तीव्र गतिले सोमयाग गर्नेहरू यजमानका नजिकै जान्छन्।

यद्दधिषे प्रदिवि चार्वन्नं दिवेदिवे पीतिमिदस्य वक्षि।
उत हृदोत मनसा जुषाण उशन्निन्द्र प्रस्थितान् पाहि सोमान् ॥२॥

हे इन्द्रदेव ! प्राचीन कालमा तिमी सुन्दर अन्न पेटमा धारण गर्दथ्यौ। त्यही सोम तिमी दिनहुँ पिउने इच्छा गर। हृदय र मनले हाम्रो कल्याणको इच्छा गर्दै सोमरस पान गर।

जज्ञानः सोमं सहसे पपाथ प्र ते माता महिमानमुवाच।
एन्द्र पप्राथोर्वन्तरिक्षं युधा देवेभ्यो वरिवश्चकर्थ ॥३॥

हे इन्द्रदेव ! जन्मका समयदेखि नै तिमीले शक्ति प्राप्त गर्नका लागि सोमपान गरेका थियौ। तिम्रा महिमाको वर्णन तिम्री माता अदितिले गरिन्। तिमीले आफ्नै वर्चस्वले विस्तृत अन्तरिक्षलाई पूर्ण गर्‍यौ र युद्धका माध्यमबाट देवता या स्तोताका लागि धन एकत्र गर्‍यौ।

यद्योधया महतो मन्यमानान्त्साक्षाम तान् बाहुभिः शाशदानान्।
यद्वा नृभिर्वृत इन्द्राभियुध्यास्तं त्वयाजिं सौश्रवसं जयेम ॥४॥

हे इन्द्रदेव ! आफैंलाई ठूलो ठान्ने शत्रुसित हाम्रो युद्ध हुँदा हामी आफ्ना बाहुले नै हिंसक शत्रुको दमन गर्न सकौं। तिमी यदि स्वयं अन्न वा यशका लागि युद्ध गर्दछौ, त्यस बेला हामी तिमीसँग रहेर त्यो युद्ध जितौं।

प्रेन्द्रस्य वोचं प्रथमा कृतानि प्र नूतना मघवा या चकार।
यदेददेवीरसहिष्ट माया अथाभवत्केवलः सोमो अस्य ॥५॥

प्राचीन र आधुनिक कालमा इन्द्रदेवले गरेका पराक्रमको हामी वर्णन गर्दछौं। इन्द्रदेवले जबदेखि कपटी र कुटिल असुरहरूलाई परास्त गर्छन्, तबदेखि सोम केवल इन्द्रदेवका लागि नै सुरक्षित छ।

**तवेदं विश्वमभितः पशव्यं१ यत्पश्यसि चक्षसा सूर्यस्य।**
**गवामसि गोपतिरेक इन्द्र भक्षीमहि ते प्रयतस्य वस्वः ॥६॥**

हे इन्द्रदेव ! सूर्यका तेजले जेजति देखिन्छ, त्यो पशुले युक्त विश्व तिम्रै हो। सबै गाईका स्वामी तिमी नै हौ। तिमीले दिएको धन हामी भोग गर्दछौं।

**बृहस्पते युवमिन्द्रश्च वस्वो दिव्यस्येशाथे उत पार्थिवस्य।**
**धत्तं रयिं स्तुवते कीरये चिद्यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

हे बृहस्पति र इन्द्रदेव ! तिमीहरू दुवै पृथ्वी र द्युलोकको ऐश्वर्यका स्वामी हौ, त्यसैले स्तोतालाई ऐश्वर्य प्रदान गर र कल्याणकारी साधनले हाम्रो सुरक्षा गर।

[सूक्त - ९९]

**ऋषि** – वसिष्ठ मैत्रावरुणि। **देवता** – विष्णु इन्द्राविष्णू। **छन्द** – त्रिष्टुप्।

**परो मात्रया तन्वा वृधान न ते महित्वमन्वश्नुवन्ति।**
**उभे ते विद्म रजसी पृथिव्या विष्णो देव त्वं परमस्य वित्से ॥१॥**

परामाताहरूबाट शरीर बढाउने हे विष्णुदेव ! तिम्रो महानता कसैले पनि जानेर सक्दैन। तिम्रा द्युलोक र पृथ्वीलाई मात्र जान्दछन्। तिमी त परभन्दा पर पनि जान्दछौ।

**न ते विष्णो जायमानो न जातो देव महिम्नः परमन्तमाप।**
**उदस्तभ्ना नाकमृष्वं बृहन्तं दाधर्थ प्राचीं ककुभं पृथिव्याः ॥२॥**

हे विष्णुदेव ! जो जन्मिइसकेका छन्, जो जन्मिनेछन् ती दुवैले तिम्रा महिमाको अन्त्य जान्दैनन्। दर्शनका लागि योग्य विराट् द्युलोकलाई तिमीले धारण गरेका छौ। पृथ्वीका पूर्व दिशालाई पनि तिमीले नै धारण गरेका छौ।

**इरावती धेनुमती हि भूतं सूयवसिनी मनुषे दशस्या।**
**व्यस्तभ्ना रोदसी विष्णवेते दाधर्थ पृथिवीमभितो मयूखैः ॥३॥**

हे द्यावापृथिवी ! मानिसको कल्याणका आकाङ्क्षाले तिमीहरू दुवै गाई र अन्नले परिपूर्ण भएका छौ। हे विष्णुदेव ! तिमीले द्युलोक र पृथ्वीलाई स्थिरता प्रदान गरेका छौ र पर्वतबाट पृथ्वीलाई अड्याएका छौ।

**उरुं यज्ञाय चक्रथुरु लोकं जनयन्ता सूर्यमुषासमग्निम्।**
**दासस्य चिद्वृषशिप्रस्य माया जघ्नथुर्नरा पृतनाज्येषु ॥४॥**

सृष्टिरूपी यज्ञ चलाउनका लागि द्युलोक र पृथ्वीबाट निस्केका स्थान बनायौ। सूर्य, उषा र अग्नि तिमीले उत्पन्न गर्‍यौ। हे नेतृत्व गर्ने इन्द्र र विष्णुदेव ! तिमीले वृषशिप्रका कुटिल र कपटपूर्ण आक्रमणका योजना युद्धमा विनाश गरिदियौ।

**इन्द्राविष्णू दृंहिताः शम्बरस्य नव पुरो नवतिं च श्नथिष्टम्।**
**शतं वर्चिनः सहस्रं च साकं हथो अप्रत्यसुरस्य वीरान् ॥५॥**

हे इन्द्र र विष्णुदेव ! तिमीले शम्बर असुरका उनान्सय बलिया नगर ध्वस्त गर्‍यौ। तिमीले वर्ची नामका सयौं वा हजारौं वीरलाई असाधारण तरिकाले विनाश गर्‍यौ।

**इयं मनीषा बृहती बृहन्तोरुक्रमा तवसा वर्धयन्ती।**
**ररे वां स्तोमं विदथेषु विष्णो पिन्वतमिषो वृजनेष्विन्द्र ॥६॥**

महान् स्तुतिले महापराक्रमी र बलशाली इन्द्रदेव र विष्णुदेवको यश बढाउँछ। हे इन्द्र र विष्णुदेव ! यज्ञद्वारा हामी स्तोत्र प्रेषित गर्दछौं। युद्धमा हाम्रो अन्न वृद्धि गराओ।

**वषट् ते विष्णवास आ कृणोमि तन्मे जुषस्व शिपिविष्ट हव्यम्।**
**वर्धन्तु त्वा सुष्टुतयो गिरो मे यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

हे विष्णुदेव ! हामी स्तुति गाउँदै तिम्रा तिम्ति वषट्कारसहित यो अन्न समर्पित गर्दछौं। हे तेजस्वी विष्णु ! हामीले प्रदान गरेको हविष्यान्न स्वीकार गर। हाम्रो श्रेष्ठ स्तुति र प्रार्थनाले तिम्रो यश संवर्द्धित गरोस्। तिमी सबै देवताहरूसँग मिलेर हाम्रो संरक्षण गर।

[सूक्त - १००]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - विष्णु। छन्द - त्रिष्टुप्।

**नू मर्तो दयते सनिष्यन्यो विष्णव उरुगायाय दाशत्।**
**प्र यः सत्राचा मनसा यजात एतावन्तं नर्यमाविवासात् ॥१॥**

धेरै तिरबाट प्रशंसित विष्णुदेवलाई हविष्यान्न प्रदान गर्ने मानिस धनको अभिलाषा हुँदा शीघ्र धन प्राप्त गर्दछ। मानिसका हितैषि विष्णुदेवको अर्चना गर्ने र सँगै उच्चारण गरिने मन्त्रले विचारपूर्वक विष्णुदेवका लागि यज्ञ गर्नेहरू चाँडै ऐश्वर्यशाली बन्दछन्।

**त्वं विष्णो सुमतिं विश्वजन्यामप्रयुतामेवयावो मतिं दाः।**
**पर्चो यथा नः सुवितस्य भूरेरश्वावतः पुरुश्चन्द्रस्य रायः ॥२॥**

रहर पूरा गराउने हे विष्णुदेव ! हामीलाई विश्वहितकारी, दोषहीन, सदविचारयुक्त बुद्धि प्रदान गर। हामीलाई सुख प्राप्त हुने, अश्वझैँ लक्ष्यमा पुऱ्याउने, आनन्ददायक, श्रेष्ठ र पर्याप्त धन प्राप्त होस्।

**त्रिर्देवः पृथिवीमेष एतां वि चक्रमे शतर्चसं महित्वा।**
**प्र विष्णुरस्तु तवसस्तवीयान्त्वेषं ह्यस्य स्थविरस्य नाम ॥३॥**

विष्णुले सहस्र तेजयुक्त पृथ्वी आफ्ना महिमाले तीन चरणमा नापिदिए र विशेष तरिकाले पोषण गरे। सबैभन्दा विराट् विष्णु हाम्रा सहायक होऊन्। यी विराट् देवताको नाम ज्यादै तेजस्वी छ।

**वि चक्रमे पृथिवीमेष एतां क्षेत्राय विष्णुर्मनुषे दशस्यन्।**
**ध्रुवासो अस्य कीरयो जनास उरुक्षितिं सुजनिमा चकार ॥४॥**

मानिसलाई आवास प्रदान गर्ने इच्छा गरेर, विष्णुदेवले पृथ्वीमा विचित्र पराक्रम गरेका थिए। विष्णुदेवका भक्तहरू यहाँ स्थिर रहन्छन्। उत्तम जन्म धारण गर्ने विष्णुदेवले विस्तृत निवास बनाएका छन्।

**प्र तत्ते अद्य शिपिविष्ट नामार्यः शंसामि वयुनानि विद्वान्।**
**तं त्वा गृणामि तवसमतव्यान्क्षयन्तमस्य रजसः पराके ॥५॥**

हे तेजस्वी विष्णु ! हामी तिम्रो महानता र सबै कर्म जानेर तिम्रा सबै श्रेष्ठ नामको कीर्तन गरेर श्रेष्ठ बन्दछौँ। हे देवता ! तिमी महान् छौ, हामी साना छौँ। त्यसै कारण तिम्रो प्रार्थना गर्दछौँ। तिमी यस लोकभन्दा पर छौ।

**किमित्ते विष्णो परिचक्ष्यं भूत्प्र यद्ववक्षे शिपिविष्टो अस्मि।**
**मा वर्पो अस्मदप गूह एतद्यदन्यरूपः समिथे बभूथ ॥६॥**

हे विष्णु ! तिमीले आफ्नो जुन शिपिविष्ट नाम राखेका छौ, त्यो त्याग गर्न योग्य छ र ? बेलाबेला तिमीले अनेकौँ रूप धारण गरेका छौ, त्यसैले तिम्रो यो दिव्य रूप हामीबाट टाढा नहोस्।

**वषट् ते विष्णवास आ कृणोमि तन्मे जुषस्व शिपिविष्ट हव्यम्।**
**वर्धन्तु त्वा सुष्टुतयो गिरो मे यूयं पात स्वस्तिभिः सदा नः ॥७॥**

हे विष्णुदेव ! हामीले स्तुतिगान गर्दै तिम्रा तिम्ति वषट्कारसहित यो अन्न समर्पित गरेका छौँ। हे तेजस्वी विष्णु ! हामीले प्रदान गरेको हविष्यान्न स्वीकार गर। हाम्रो श्रेष्ठ स्तुति र प्रार्थनाले तिम्रो यश संवर्द्धित गरुन्। सबै देवतासँग हाम्रो संरक्षण गर।

[सूक्त - १०१]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - पर्जन्य। छन्द - त्रिष्टुप्।

**तिस्रो वाचः प्र वद ज्योतिरग्रा या एतद्दुह्रे मधुदोघमूधः।**
**स वत्सं कृण्वन् गर्भमोषधीनां सद्यो जातो वृषभो रोरवीति ॥१॥**

जुन वाणी यो मधुर रसको स्रोत दोहन गर्न समर्थ छ, तिनै अग्रभागमा ज्योति धारण गर्ने तीन वाणी उच्चारण गरौँ। तिनीहरू तत्काल उत्पन्न भएका बलशाली र वर्षणशील मेघ र औषधिको गर्भ सिर्जना गर्दै गर्जन्छन्।

**यो वर्धन ओषधीनां यो अपां यो विश्वस्य जगतो देव ईशे।**
**स त्रिधातु शरणं शर्म यंसत्त्रिवर्तु ज्योतिः स्वभिष्ट्यस्मे ॥२॥**

संसारका नियन्ता, औषधि र जल बढाउने देवताले हामीलाई तीन धातुबाट सम्बन्ध, आश्रय र सुख प्रदान गरुन्। तीनै किसिमका ऋतुमा अभीष्ट र श्रेष्ठ ज्योति दिऊन्।

स्तरीरु त्वद्भवति सूत उ त्वद्यथावशं तन्वं चक्र एषः।
पितुः पयः प्रति गृभ्णाति माता तेन पिता वर्धते तेन पुत्रः ॥३॥

इच्छाअनुसार शरीर धारण गर्ने पर्जन्यदेवको एउटा रूप ब्याउन तयार र अर्को ब्याएका गाईको जस्तो हुन्छ। पितारूपी पर्जन्यको पय मातारूपी पृथ्वीले प्राप्त गर्छ। उसैबाट पितारूपी पर्जन्य र पुत्ररूपी स्थावरजङ्गम वढ्दछन्।

यस्मिन् विश्वानि भुवनानि तस्थुस्तिस्रो द्यावस्त्रेधा सस्रुरापः।
त्रयः कोशास उपसेचनासो मध्वः श्चोतन्त्यभितो विरप्शम् ॥४॥

जसमा सबै भुवनले निवास गर्दछन्, जसमा सबै लोकहरू अवस्थित छन्, जसबाट तीन किसिमका जलको वर्षा हुन्छ, तीन किसिमका कोशद्वारा जसले सेचन गर्दछ, मधुर रसलाई सबै तिरबाट वर्षा गराउने देवता ती पर्जन्यदेव नै हुन्।

इदं वचः पर्जन्याय स्वराजे हृदो अस्त्वन्तरं तज्जुजोषत्।
मयोभुवो वृष्टयः सन्त्वस्मे सुपिप्पला ओषधीर्देवगोपाः ॥५॥

यस्तो स्तुति स्वयं प्रकाशित पर्जन्यदेवका लागि गरिन्छ, उनले स्वीकार गरुन्। यस स्तुतिले उनलाई हृदयमा आनन्द उत्पन्न गराओस्। पर्जन्यदेवले हामी सबैका लागि सुखदायी वर्षा गरुन् र वृष्टिको जल प्राप्त गरेर औषधि सुरक्षित रूपमा फुलून्‌फलून्।

स रेतोधा वृषभः शश्वतीनां तस्मिन्नात्मा जगतस्तस्थुषश्च।
तन्म ऋतं पातु शतशारदाय यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

अनन्त औषधिका लागि पर्जन्यदेव साँढेको जस्तै वल र वीर्य धारण गर्दछन्। त्यसैले स्थावरजङ्गम जगत्को आत्मा पर्जन्यमा निवास गर्दछ। पर्जन्यले प्रदान गरेका जलले सय वर्षसम्म हाम्रा जीवनको कल्याण होस्। हे पर्जन्यदेव ! तिमी सधैं कल्याणकारी साधनले हाम्रो पालन गर।

[सूक्त - १०२]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - पर्जन्य। छन्द - गायत्री।

पर्जन्याय प्र गायत दिवस्पुत्राय मीढुषे। स नो यवसमिच्छतु ॥१॥

हे स्तोता हो ! अन्तरिक्षका पुत्र र वर्षा गराउने पर्जन्यलाई प्रार्थना गर। उनले हामीलाई अन्न, औषधि र वनस्पति प्रदान गरुन्।

यो गर्भमोषधीनां गवां कृणोत्यर्वताम्। पर्जन्यः पुरुषीणाम् ॥२॥

पर्जन्यदेवले गाई र अश्वमा गर्भ स्थापित गराउने औषधि मानव स्त्रीहरूका लागि पनि उपयोगी हुन्छ।

तस्मा इदास्ये हविर्जुहोता मधुमत्तमम्। इडां नः संयतं करत् ॥३॥

पर्जन्यदेवका लागि देवताको मुखरूपी यज्ञमा सुमधुर हविष्यान्न हवन गरौं। उनले हामीलाई मनग्गे अन्न प्रदान गरुन्।

[सूक्त - १०३]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - मण्डूक। छन्द - त्रिष्टुप् अनुष्टुप्।

संवत्सरं शशयाना ब्राह्मणा व्रतचारिणः।
वाचं पर्जन्यजिन्वितां प्र मण्डूका अवादिषुः ॥१॥

वर्षभरि गुप्त रूपमा बस्ने व्रतपालक ब्राह्मणझैं रहेका भ्यागुताहरू पर्जन्यलाई खुसी गराउने खालका वाणी बोल्न थाले।

दिव्या आपो अभि यदेनमायन्दृतिं न शुष्कं सरसी शयानम्।
गवामह न मायुर्वत्सिनीनां मण्डूकानां वग्नुरत्रा समेति ॥२॥

सुकेका तलाउमा सुकेको छालाजस्तो भएर सुतेका भ्यागुताहरूसित अन्तरिक्षको जल पुगेपछि तिनीहरू लैना गाईझैं आफ्नो सोर निकालेर कराउन थाल्दछन्।

यदीमेनाँ उशतो अभ्यवर्षीत्तृष्यावतः प्रावृष्यागतायाम्।
अख्खलीकृत्या पितरं न पुत्रो अन्यो अन्यमुप वदन्तमेति ॥३॥

वर्षा काल आएपछि तिर्खाएका भ्यागुतामाथि झरीको पानी वर्सिन थाल्दछ, त्यसपछि त बाबुले

छोरासित कुरा गरेझैं गरी भ्यागुताहरू आफ्ना विनम्रताका अक्खल ध्वनि ट्यारट्यार गर्दै निकाल्दै एकापसमा नजिकिन्छन्।

**अन्यो अन्यमनु गृभ्णात्येनोरपां प्रसर्गे यदमन्दिषाताम्।**
**मण्डूको यदभिवृष्टः कनिष्कन्पृश्निः सम्पृङ्क्ते हरितेन वाचम् ॥४॥**

पानी बर्सिएपछि भ्यागुताहरू खुसीले उफ्रँदै कुद्न थालेपछि छिर्के भ्यागुतो हरिया भ्यागुतासित कुरो गर्ने शब्द निकाल्दछ। त्यस बेला ती दुवै एकापसमा अनुग्रह गर्दछन्।

**यदेषामन्यो अन्यस्य वाचं शाक्तस्येव वदति शिक्षमाणः।**
**सर्वं तदेषां समृधेव पर्व यत्सुवाचो वदथनाध्यप्सु ॥५॥**

शिष्यले गुरुको भनाइ अनुसरण गरेर बोलेझैं भ्यागुताहरू एकले अर्काको अनुसरण गर्दछन्। हे भ्यागुताहरू हो ! पानीमा हाम फाल्दै राम्रो शब्द निकाल्दाखेरि तिमीहरूको शरीर बलियो भएझैं देखिन्छ।

**गोमायुरेको अजमायुरेकः पृश्निरेको हरित एक एषाम्।**
**समानं नाम बिभ्रतो विरूपाः पुरुत्रा वाचं पिपिशुर्वदन्तः ॥६॥**

एउटा भ्यागुतो गाईजस्तो बोल्दछ, अर्को बाख्रोझैं कराउँछ। कुनै खैरो रङ्गका छन्, कुनै हरियो वर्णका। यसरी अनेकौं रूपरङ्ग भए पनि सबै भ्यागुतो भन्ने एउटै नामले परिचित छौ र विभिन्न किसिमका शब्द अनेकौं ठाउँमा निकाल्दै गरेका भेटिन्छौ।

**ब्राह्मणासो अतिरात्रे न सोमे सरो न पूर्णमभितो वदन्तः।**
**संवत्सरस्य तदहः परि ष्ठ यन्मण्डूकाः प्रावृषीणं बभूव ॥७॥**

हे भ्यागुताहरू हो ! अतिरात्र नामको सोमयज्ञका याजकको जस्तै शब्द गर्दै तलाउमा प्रसन्नतापूर्वक विचरण गर। तिमीहरूलाई घुम्नका लागि यहाँ मनग्गे ठाउँ छ।

**ब्राह्मणासः सोमिनो वाचमक्रत ब्रह्म कृण्वन्तः परिवत्सरीणम्।**
**अध्वर्यवो घर्मिणः सिष्विदाना आविर्भवन्ति गुह्या न के चित् ॥८॥**

वर्षभरि चल्ने सोमयुक्त यज्ञमा स्तोताले मन्त्रको ध्वनि निकालेझैं भ्यागुताले शब्द गर्दछन्। याज्ञिक अध्वर्युहरू गुप्त स्थानमा बस्दा बाहिर ननिस्कीकन पसिनाले भिजेझैं भ्यागुताहरू पनि दुलाबाट बाहिर निस्कँदैनन्।

**देवहितिं जुगुपुर्द्वादशस्य ऋतुं नरो न प्र मिनन्त्येते।**
**संवत्सरे प्रावृष्यागतायां तप्ता घर्मा अश्नुवते विसर्गम् ॥९॥**

भ्यागुता नेतृत्व क्षमताले सम्पन्न मानिसझैं ईश्वरीय अनुशासनको संरक्षण गर्दछन्। यी बाह्रै महिनाका ऋतु उल्लङ्घन गर्दैनन्। वर्षा काल आउँदा वर्षभरि दःख पाएका भ्यागुता आफ्ना दुलाबाट बाहिर आउँछन्।

**गोमायुरदादजमायुरदात्पृश्निरदाद्धरितो नो वसूनि।**
**गवां मण्डूका ददतः शतानि सहस्रसावे प्र तिरन्त आयुः ॥१०॥**

गाई र बाख्राको जस्तै ध्वनि निकाल्ने भ्यागुताले हामीलाई धन दिऊन्। हरिया र छिर्के रङ्गका भ्यागुताले हामीलाई धन दिऊन्। हजारौं औषधि वृद्धि गराउने वर्षा ऋतुमा सयौं गाई प्रदान गर्ने यी भ्यागुताले हाम्रो आयु बढाउँछन्।

### [सूक्त - १०४]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। देवता - इन्द्र सोम अग्नि ग्रावा। **छन्द** - त्रिष्टुप् जगती।

**इन्द्रासोमा तपतं रक्ष उब्जतं न्यर्पयतं वृषणा तमोवृधः।**
**परा शृणीतमचितो न्योषतं हतं नुदेथां नि शिशीतमत्रिणः ॥१॥**

हे इन्द्र र सोमदेव ! जलाएर राक्षसलाई मार। हे अभीष्टवर्षक ! तिमीहरू अज्ञानरूपी अन्धकारमा विकसित भएका राक्षसको विनाश गर। ज्ञानहीन राक्षसलाई सताउँदै मारेर हामीभन्दा पर फ्याँकिदेओ। अर्काको मासु खानेलाई बिताइदेओ।

**इन्द्रासोमा समघशंसमभ्य१घं तपुर्ययस्तु चरुरग्निवाँ इव।**
**ब्रह्मद्विषे क्रव्यादे घोरचक्षसे द्वेषो धत्तमनवायं किमीदिने ॥२॥**

हे इन्द्र र सोमदेव ! महापापी, प्रसिद्ध दुष्टलाई नष्ट गर। तिमीहरूका तेजले आगोमा हालेको

चरुजस्तै तिनीहरू डढेर नाश होऊन्। ज्ञानसित द्वेष गर्ने, काँचो मासु खाने, भयानक रूप भएका, सबै कुरो खानेसित सधैं शत्रुताको भाव राख।

**इन्द्रासोमा दुष्कृतो वव्रे अन्तरनारम्भणे तमसि प्र विध्यतम्।**
**यथा नातः पुनरेकश्चनोदयत्तद्वामस्तु सहसे मन्युमच्छवः ॥३॥**

हे इन्द्र र सोमदेव ! दुष्टकर्म भएका राक्षसलाई गहिरो अन्धकारमा डुवाइदेओ। त्यसबाट फेरि तिनीहरू निस्कन नसकून्। तिमीहरूको शत्रु नाश गर्ने बल, शत्रु जित्न समर्थ होस्।

**इन्द्रासोमा वर्तयतं दिवो वधं सं पृथिव्या अघशंसाय तर्हणम्।**
**उत्तक्षतं स्वर्यं पर्वतेभ्यो येन रक्षो वावृधानं निजूर्वथः ॥४॥**

हे इन्द्र र सोमदेव ! अन्तरिक्षबाट घातक हतियार उत्पन्न गराओ। राक्षस विनाश गर्नका लागि पृथ्वीबाट आयुध प्रकट गर। मेघबाट राक्षस विध्वंस गर्ने वज्र उत्पन्न गरेर बढ्दै आएका राक्षसलाई मार।

**इन्द्रासोमा वर्तयतं दिवस्पर्यग्नितप्तेभिर्युवमश्महन्मभिः।**
**तपुर्वधेभिरजरेभिरत्रिणो नि पर्शाने विध्यतं यन्तु निस्वरम् ॥५॥**

हे इन्द्र र सोमदेव ! अन्तरिक्षका चारैतिर आयुध बर्साओ। तिमीहरू दुवै अग्निले झैं तताउने, ढुङ्गोजस्तै मार्न सक्ने, तापयुक्त प्रहार भएका, कहिल्यै नथोत्रिने आयुधले लुटेर खाने राक्षसलाई बिताइदेओ, त्यसो भएपछि तिनीहरू चुप लागेर भागून्।

**इन्द्रासोमा परि वां भूतु विश्वत इयं मतिः कक्ष्याश्वेव वाजिना।**
**यां वां होत्रां परिहिनोमि मेधयेमा ब्रह्माणि नृपतीव जिन्वतम् ॥६॥**

हे इन्द्र र सोमदेव ! नजिकैं रहेका डोरीले घोडालाई चारै तिरबाट बाँधेझैं यस स्तुतिले तिमीहरूलाई पनि व्याप्त गरोस्। तिमीहरू बलिष्ठ छौ। आफ्ना मेधाशक्तिका बलले यो प्रार्थना तिमीहरूकहाँ पठाउँछौं। राजाजस्तै तिमीहरू स्तुति सफल गराओ।

**प्रति स्मरेथां तुजयद्भिरेवैर्हतं द्रुहो रक्षसो भङ्गुरावतः।**
**इन्द्रासोमा दुष्कृते मा सुगं भूद्यो नः कदा चिदभिदासति द्रुहा ॥७॥**

हे इन्द्र र सोमदेव ! तिमीहरू शीघ्रगामी अश्वद्वारा शत्रुमाथि आक्रमण गर। द्रोह गर्ने विनाशकारी राक्षसको विनाश गर। दुष्कर्मीसित सजिलै भेट नगर। द्रोह गर्नेले कुनै पनि बेला हामीलाई विनाश गर्न सक्दछ।

**यो मा पाकेन मनसा चरन्तमभिचष्टे अनृतेभिर्वचोभिः।**
**आपइव काशिना सङ्गृभीता असन्नस्त्वासत इन्द्र वक्ता ॥८॥**

पवित्र मनले आचरण गर्ने मलाई जुन राक्षसले असत्य बोलेर दोषी सिद्ध गर्दछ, हे इन्द्रदेव ! त्यो असतो मुठ्ठीमा बाँधिएको जलजस्तै पूरै नाश होस्।

**ये पाकशंसं विहरन्त एवैर्ये वा भद्रं दूषयन्ति स्वधाभिः।**
**अहये वा तान् प्रददातु सोम आ वा दधातु निर्ऋतेरुपस्थे ॥९॥**

जसले मजस्ता विशुद्ध मन भएका वसिष्ठलाई आफ्ना स्वार्थले कष्ट दिन्छ या आफ्ना धन साधनले मजस्ता कल्याणवृत्ति भएकालाई दोषपूर्ण बनाउँछन्। हे सोमदेव ! तिमी तिनलाई विषालु सर्पमाथि फ्याँकिदेऊ अथवा दरिद्र बनाइदेऊ।

**यो नो रसं दिप्सति पित्वो अग्ने यो अश्वानां यो गवां यस्तनूनाम्।**
**रिपुः स्तेनः स्तेयकृद्दभ्रमेतु नि ष हीयतां तन्वा३ तना च ॥१०॥**

हे अग्निदेव ! हाम्रा अन्नको सारतत्त्व जसले नाश गर्न खोजेको छ, जसले गाई, अश्व र सन्तानको विनाश गर्दछ, त्यस्ता चोर, समाजका शत्रु विनाश होऊन्। तिनीहरूले आफ्नो ज्यान र सन्तान गुमाऊन्।

**परः सो अस्तु तन्वा३ तना च तिस्रः पृथिवीरधो अस्तु विश्वाः।**
**प्रति शुष्यतु यशो अस्य देवा यो नो दिवा दिप्सति यश्च नक्तम् ॥११॥**

दुष्ट पातकी शरीर र सन्तानसहित नाश होऊन्। पृथ्वी आदि तीनै लोकबाट तिनीहरू पतन होऊन्। हे देवताहरू ! तिनको कीर्ति क्षीण भएर विनाश होस्। हामीलाई दिनरात सताउने दुष्ट राक्षस नाश होस्।

सुविज्ञानं चिकितुषे जनाय सच्चासच्च वचसी पस्पृधाते।
तयोर्यत्सत्यं यतरदृजीयस्तदित्सोमोऽवति हन्त्यासत्॥१२॥

सत्य र असत्य वचन परस्परमा स्पर्धा गर्दछन् भन्ने विद्वान् मानिसले जान्दछ। त्यसमा सत्य र सरल पक्षको सोमदेवले सुरक्षा गर्दछन् र असत्यको हनन गर्दछन्।

न वा उ सोमो वृजिनं हिनोति न क्षत्रियं मिथुया धारयन्तम्।
हन्ति रक्षो हन्त्यासद्वदन्तमुभाविन्द्रस्य प्रसितौ शयाते॥१३॥

पाप गर्ने, मिथ्याचारी र बलवान्लाई पनि सोमदेवले मारिदिन्छन्। उनी राक्षस मार्दछन् र असत्य बोल्नेलाई पनि मार्दछन्। तिनीहरू मारिएपछि इन्द्रद्वारा बाँधिन्छन्।

यदि वाहमनृतदेव आस मोघं वा देवाँ अप्यूहे अग्ने।
किमस्मभ्यं जातवेदो हृणीषे द्रोघवाचस्ते निर्ऋथं सचन्ताम्॥१४॥

भुल गरेर अनृत देवको उपासना गर्दा अथवा व्यर्थमा नै देवताकहाँ जाँदा हे अग्निदेव ! हामीमाथि क्रोध नगर। द्रोही र मिथ्याभाषी नै तिमीबाट हिंसित होऊन्।

अद्या मुरीय यदि यातुधानो अस्मि यदि वायुस्ततप पूरुषस्य।
अधा स वीरैर्दशभिर्वि यूया यो मा मोघं यातुधानेत्याह॥१५॥

हामी वसिष्ठहरू राक्षस हौं र कुनै सज्जन पुरुषको हिंसा गर्दछौं भने आजै मरौं। हामीलाई व्यर्थै कसैले राक्षस भनेर सम्बोधन गर्दछन् भने तिनीहरू आफ्ना परिवारका दस वीरसहित नष्ट होऊन्।

यो मायातुं यातुधानेत्याह यो वा रक्षाः शुचिरस्मीत्याह।
इन्द्रस्तं हन्तु महता वधेन विश्वस्य जन्तोरधमस्पदीष्ट॥१६॥

मजस्ता दैवी स्वभावका वसिष्ठलाई राक्षस भन्ने र आफूलाई शुद्ध छु भन्ने राक्षसलाई इन्द्रदेवले महान् आयुधद्वारा नष्ट गरुन्। तिनीहरू सबैबाट पतित भएर झरुन्।

प्र या जिगाति खर्गलेव नक्तमप द्रुहा तन्वं गूहमाना।
वव्राँ अनन्ताँ अव सा पदीष्ट ग्रावाणो घ्नन्तु रक्षस उपब्दैः॥१७॥

रातका समयमा आफ्नो शरीर लुकाएर उल्लुझैं चल्ने राक्षसीहरू उँधोमुन्टो लाग्दै अनन्त खाँलामा परुन्। ढुङ्गाले ठूलो शब्दका साथ ती राक्षसको विनाश गरुन्।

वि तिष्ठध्वं मरुतो विक्ष्विच्छत गृभायत रक्षसः सं पिनष्टन।
वयो ये भूत्वी पतयन्ति नक्तभिर्ये वा रिपो दधिरे देवे अध्वरे॥१८॥

हे मरुत्वीर हो ! तिमी प्रजाका बीचमा रहेर राक्षसलाई खोज्ने विचार गर। रातका समयमा पक्षी बनेर आउने, यज्ञमा हिंसा गर्ने राक्षसलाई पक्रेर विनाश गर।

प्र वर्तय दिवो अश्मानमिन्द्र सोमशितं मघवन्त्सं शिशाधि।
प्राक्तादपाक्तादधरादुदक्तादभि जहि रक्षसः पर्वतेन॥१९॥

हे इन्द्रदेव ! तिमी अन्तरिक्ष मार्गबाट वज्र प्रहार गर। हे धनवान् इन्द्रदेव ! तिमी आफ्ना यजमानलाई सोमद्वारा संस्कारित गर। राक्षसलाई पूर्व, पश्चिम, उत्तर र दक्षिण आदि सबै दिशाबाट वज्रले हानेर विनाश गर।

एत उ त्ये पतयन्ति श्वयातव इन्द्रं दिप्सन्ति दिप्सवोऽदाभ्यम्।
शिशीते शक्रः पिशुनेभ्यो वधं नूनं सृजदशनिं यातुमद्भ्यः॥२०॥

कुकुरझैं टोकन आउने र अहिंसनीय इन्द्रदेवलाई हिंसा गर्न खोज्ने कपटी राक्षस मार्नका लागि इन्द्रदेव वज्र तेज गराउँछन्। इन्द्रदेव वज्रले दुष्ट राक्षस शीघ्र विनाश गरुन्।

इन्द्रो यातूनामभवत् पराशरो हविर्मथीनामभ्या३ विवासताम्।
अभीदु शक्रः परशुर्यथा वनं पात्रेव भिन्दन्त्सत एति रक्षसः ॥२१॥

इन्द्रदेव राक्षसको दमन गर्दछन्। हविष्यको विनाश गर्नेलाई पराजित गराउँछन्। फर्साले वन काटेझैं, मुसलले माटाका भाँडा फुटाएझैं अगाडि आएका राक्षसको संहार गर्दछन्।

उलूकयातुं शुशुलूकयातुं जहि श्वयातुमुत कोकयातुम्।
सुपर्णयातुमुत गृध्रयातुं दृषदेव प्र मृण रक्ष इन्द्र ॥२२॥

हे इन्द्रदेव ! तिमी उल्लुजस्तालाई मारिदेऊ। ब्वाँसाजस्ता, कुकुरजस्ता, चखेवाजस्ता, बाज र गिद्धजस्ता राक्षसलाई ढुङ्गाले हानेर मार र यी सबैबाट हामीलाई जोगाऊ।

मा नो रक्षो अभि नड्यातुमावतामपोच्छतु मिथुना या किमीदिना।
पृथिवी नः पार्थिवात् पात्वंहसोऽन्तरिक्षं दिव्यात्पात्वस्मान् ॥२३॥

राक्षस हाम्रा लागि घातक नहोऊन्, कष्ट दिने स्त्रीपुरुषका जोडीबाट हामी जोगिऔं। आपसमा फाटो पार्ने घातक राक्षसबाट पनि हामी बचौं। पृथ्वीले हामीलाई भूलोकका पापबाट बचाऊन्। अन्तरिक्षले हामीलाई आकाशका पापबाट बचाऊन्।

इन्द्र जहि पुमांसं यातुधानमुत स्त्रियं मायया शाशदानाम्।
विग्रीवासो मूरदेवा ऋदन्तु मा ते दृशन्त्सूर्यमुच्चरन्तम् ॥२४॥

इन्द्रदेवले पुरुष राक्षसको विनाश गरुन् र कपटी हिंसक स्त्रीको विनाश गरुन्। हिंसाको खेल खेल्नेलाई मुर्कट्टा गराऊन्। तिनीहरू सूर्योदयभन्दा पहिले समाप्त होऊन्।

प्रति चक्ष्व वि चक्ष्वेन्द्रश्च सोम जागृतम्।
रक्षोभ्यो वधमस्यतमशनिं यातुमद्भ्यः ॥२५॥

हे सोमदेव ! तिमी र इन्द्रदेव जागा रहेर सबै राक्षसलाई हेरिराख। राक्षस मार्ने अस्त्र उनीहरूमाथि फ्याँक र कष्ट दिनेलाई वज्रले संहार गर।

॥इति सप्तमं मण्डलं समाप्तम्॥
सातौं मण्डल सकियो

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथाष्टमं मण्डलम्॥

॥आठौं मण्डल॥

[सूक्त - १]

**ऋषि** - काण्व आसङ्ग प्लायोगि शश्वती। **देवता** - इन्द्र। **छन्द** - प्रगाथ बृहती त्रिष्टुप्।

**मा चिदन्यद्वि शंसत सखायो मा रिषण्यत।**
**इन्द्रमित्स्तोता वृषणं सचा सुते मुहुरुक्था च शंसत॥१॥**

हे मित्रहरू हो ! इन्द्रदेवबाहेक अन्य कुनै देवताको स्तुति गरेर लाभ छैन। त्यसमा शक्ति नष्ट नगरौँ। सोम शोधित गरेर, एकत्र भएर, संयुक्त रूपले बलशाली इन्द्रदेवकै बारम्बार प्रार्थना गरौँ।

**अवक्रक्षिणं वृषभं यथाजुरं गां न चर्षणीसहम्।**
**विद्वेषणं संवननोभयङ्करं मंहिष्ठमुभयाविनम्॥२॥**

बलियो साँढेजस्ता सङ्घर्षशील, नबुढिने, शत्रुको विरोध र संहार गर्ने, वैदिक र भौतिक ऐश्वर्य प्रदान गर्ने महान् इन्द्रदेवकै स्तुति गरौँ।

**यच्चिद्धि त्वा जना इमे नाना हवन्त ऊतये।**
**अस्माकं ब्रह्मेदमिन्द्र भूतु तेऽहा विश्वा च वर्धनम्॥३॥**

हे इन्द्रदेव ! यद्यपि सबै मानिसले आफ्नो रक्षाका लागि तिम्रो आह्वान गर्दछन्, तापनि हाम्रा स्तुतिले तिम्रो गौरव निरन्तर बढाउँछ।

**वि तर्तूर्यन्ते मघवन् विपश्चितोऽर्यो विपो जनानाम्।**
**उप क्रमस्व पुरुरूपमा भर वाजं नेदिष्ठमूतये॥४॥**

ऐश्वर्यवान्, ज्ञानी, श्रेष्ठ र मनुष्यका पालक हे इन्द्रदेव ! तिम्रा कृपाले स्तोता विपद्‌बाट जोगिन्छन्। हाम्रा नजिकै आऊ र पोषणका निम्ति विविध किसिमका बल प्रदान गर।

**महे चन त्वामद्रिवः परा शुल्काय देयाम्।**
**न सहस्राय नायुताय वज्रिवो न शताय शतामघ॥५॥**

हे वज्रधारी इन्द्रदेव ! अत्यधिक धन पाए पनि तिमीलाई त्याग्न सक्दिँन। हे ऐश्वर्यवान् इन्द्रदेव ! सय, हजार, दस हजार जतिसुकै मूल्यमा पनि तिम्रो भक्ति त्याग्न सक्दिँन।

**वस्याँ इन्द्रासि मे पितुरुत भ्रातुरभुञ्जतः।**
**माता च मे छदयथः समा वसो वसुत्वनाय राधसे॥६॥**

हे इन्द्रदेव ! तिमी हाम्रा जन्मदाता पिताका तुलनामा अधिक धनवान् छौ। पालन नगर्ने दाजुभाइभन्दा बढी धनवान् छौ। सबैलाई पालन गर्ने इन्द्रदेव ! हाम्रा लागि माताकै स्तरका छौ। हामी धनधान्यले परिपूर्ण महान् जीवनको कामना गर्दछौँ।

**क्वेयथ क्वेदसि पुरुत्रा चिद्धि ते मनः।**
**अलर्षि युध्म खजकृत् पुरन्दर प्र गायत्रा अगासिषुः॥७॥**

विभिन्न स्थानमा मन रमाउने युद्ध कौशलमा निपुण, शत्रुका सहर उजाड्ने हे बलवान् इन्द्रदेव ! तिमी कता गयौ ? हाम्रा कुशल स्तोताले गाएको सामगान सुन्न यज्ञमा आऊ।

**प्रास्मै गायत्रमर्चत वावातुर्यः पुरन्दरः।**
**याभिः काण्वस्योप बर्हिरासदं यासद्वज्री भिनत्पुरः॥८॥**

उपासकमाथि कृपा गर्दै शत्रुको सहर भत्काउने इन्द्रदेवको प्रार्थना गायत्री छन्दले गरौँ। स्तुतिले प्रसन्न भएर कण्वपुत्रका यज्ञमा आउँदा उनले शत्रुका सहर वज्रले भत्काए। हामी उनै ऋचाले उनको प्रार्थना गरौँ।

ये ते सन्ति दशग्विनः शतिनो ये सहस्रिणः ।
अश्वासो ये ते वृषणो रघुद्रुवस्तेभिर्नस्तूयमा गहि ॥९॥

हे इन्द्रदेव ! सयौं वा हजारौं योजन दौडने शक्तिशाली र वेगवान् अश्वमा यहाँ आऊ।

आ त्वा१द्य सबर्दुघां हुवे गायत्रवेपसम् ।
इन्द्रं धेनुं सुदुघामन्यामिषमुरुधारामरङ्कृतम् ॥१०॥

इन्द्रदेवको प्रसन्नताका लागि हामी सजिलै दुहिने, सबैलाई दुध दिने गाईजस्तै अन्य खाल अन्न प्रदान गर्ने, अनेकौं धारायुक्त गायत्री रूपी धेनुलाई आह्वान गर्दछौं।

यत्तुदत् सूर एतशं वङ्कू वातस्य पर्णिना ।
वहत् कुत्समार्जुनेयं शतक्रतुस्त्सरद् गन्धर्वमस्तृतम् ॥११॥

सूर्यदेवले वायुको जस्तै वाङ्गो गति भएका एतशलाई दुःख दिएका बेला शतक्रतु इन्द्रले आर्जुनेय कुत्ससँग गएर नष्ट नहुने गन्धर्वरूपी सूर्यमाथि छलले आक्रमण गरे।

य ऋते चिदभिश्रिषः पुरा जत्रुभ्य आतृदः ।
सन्धाता सन्धिं मघवा पुरूवसुरिष्कर्ता विह्रुतं पुनः ॥१२॥

गलाको हड्डी रगत निस्कन नपाउँदै अन्य औषधिविनै इन्द्रदेवले जोडिदिन्छन्। धनका स्वामी इन्द्रदेवले छिन्नभिन्न भएकालाई फेरि सग्लो वा एकीकृत गर्दछन्।

मा भूम निष्ट्याइवेन्द्र त्वदरणा इव ।
वनानि न प्रजहितान्यद्रिवो दुरोषासो अमन्महि ॥१३॥

हे इन्द्रदेव ! तिम्रो कृपाले हाम्रो पतन नहोस् र न हामी दुःखी नै होऔं। पात झरेर खुइलिएको रुखजस्तो हामी सन्तानविहीन नहोऔं। हे वज्रधारी इन्द्रदेव ! हामी आफ्ना घरमा सुरक्षित रहँदै तिम्रो स्तुति गर्दछौं।

अमन्महीदनाशवोऽनुग्रासश्च वृत्रहन् ।
सकृत्सु ते महता शूर राधसानु स्तोमं मुदीमहि ॥१४॥

हे वृत्रहन्ता इन्द्रदेव ! हामी नआत्तिई र नरिसाई तिम्रो स्तवन गर्दछौं। हे वीर इन्द्रदेव ! हामी प्रचुर धनधान्यले सम्पन्न भएर एकै पटक मात्रै भए पनि तिम्रा निम्ति यज्ञ गरौं।

यदि स्तोमं मम श्रवदस्माकमिन्द्रमिन्दवः ।
तिरः पवित्रं ससृवांस आशवो मन्दन्तु तुग्र्यावृधः ॥१५॥

इन्द्रदेवले हाम्रो स्तुति सुनेदेखि हामी उत्साह प्रदान गर्ने, पवित्र हुने र जलमा उम्रेर बढ्ने सोमरस समर्पित गरेर उनलाई हर्षित गराउँछौं।

आ त्व१द्य सधस्तुतिं वावातुः सख्युरा गहि ।
उपस्तुतिर्मघोनां प्र त्वावत्वधा ते वश्मि सुष्टुतिम् ॥१६॥

हे इन्द्रदेव ! तिमी आफ्ना भावी मित्रसँगै हाम्रो र अन्य धनवान्को स्तुति सुनेर आजै आऊ। हामी तिम्रो प्रार्थना विधिवत् गर्न चाहन्छौं।

सोता हि सोममद्रिभिरेमेनमप्सु धावत ।
गव्या वस्त्रेव वासयन्त इन्नरो निर्धुक्षन्वक्षणाभ्यः ॥१७॥

हे ऋत्विक्हरू हो ! ढुङ्गामा पेलेर छानेको सोमरस पानीमा मिसाओ। बादलले पृथ्वी ढाक्दै वायुदेव नदीहरूका निमित्त पानी वर्साउँछन्।

अध ज्मो अध वा दिवो बृहतो रोचनादधि ।
अया वर्धस्व तन्वा गिरा ममा जाता सुक्रतो पृण ॥१८॥

हे इन्द्रदेव उत्तम यज्ञका आधार पृथ्वी र द्युलोकमा तिमी आफ्नो आभा विस्तार गर र आफ्ना प्रेरणाले हाम्रा सहयोगीलाई पोषण प्रदान गर।

इन्द्राय सु मदिन्तमं सोमं सोता वरेण्यम् ।
शक्र एणं पीपयद्विश्वया धिया हिन्वानं न वाजयुम् ॥१९॥

हे स्तोता हो ! अत्यन्त हर्षप्रदायक र महान् सोमरस इन्द्रदेवका निमित्त तयार गर। त्यसबाट इन्द्रदेव आफ्नो सम्पूर्ण विवेकले स्तुति गर्ने तथा अन्न प्राप्तिको कामना गर्ने याजकको इच्छा पूरा गराउन्।

मा त्वा सोमस्य गल्दया सदा याचन्नहं गिरा।
भूर्णिं मृगं न सवनेषु चुक्रुधं क ईशानं न याचिषत् ॥२०॥

सिंहजस्तै महान् पराक्रमी, भरणपोषण गर्नमा समर्थ हे इन्द्रदेव ! यज्ञमा सोमरस प्रदान गर्दै विजयदायक स्तुतिद्वारा हामी निरन्तर तिमीसित याचना गर्दछौं। हामी क्रोधका पात्र कहिल्यै नहोऔं, किनभने आफ्ना अधिपतिसित याचना नगर्ने व्यक्ति को पो होला र ?

मदेनेषितं मदमुग्रमुग्रेण शवसा।
विश्वेषां तरुतारं मदच्युतं मदे हि ष्मा ददाति नः ॥२१॥

प्रसन्नतापूर्वक तयार गरेको शक्तिशाली र हर्षप्रदायक सोमरस पान गरेर इन्द्रदेव महान् शक्तिसम्पन्न होऊन्। शत्रुको मद चुर गराउँदै विनाश गर्ने सन्तान प्रदान गरुन्।

शेवारे वार्या पुरु देवो मर्ताय दाशुषे।
स सुन्वते च स्तुवते च रासते विश्वगूर्तो अरिष्टुतः ॥२२॥

समस्त विश्वका पालक इन्द्रदेवलाई शत्रुले पनि प्रशंसा गर्छन्। सत्कर्म गर्ने, दान गर्ने, सोम अभिषव गर्ने र स्तुति गर्ने मानिसलाई उनी प्रचुर सम्पत्ति प्रदान गर्दछन्।

एन्द्र याहि मत्स्व चित्रेण देव राधसा।
सरो न प्रास्युदरं सपीतिभिरा सोमेभिरुरु स्फिरम् ॥२३॥

महान् तेजस्वी हे इन्द्रदेव ! तिमी यहाँ आऊ र हामीलाई इच्छा लागेको धन प्रदान गरेर खुसी गराऊ। मरुतहरूसँगै सोमरस पिएर आफ्नो पेट पूर्ण रूपले भर।

आ त्वा सहस्रमा शतं युक्ता रथे हिरण्यये।
ब्रह्मयुजो हरय इन्द्र केशिनो वहन्तु सोमपीतये ॥२४॥

हे इन्द्रदेव ! स्वर्णिम रथमा जुट्ने, स्तुति योग्य, लामो जगर भएका, सयौं वा हजारौं घोडाले सोमपान गर्नका लागि तिमीलाई यहाँ लिएर आऊन्।

आ त्वा रथे हिरण्यये हरी मयूरशेप्या।
शितिपृष्ठा वहतां मध्वो अन्धसो विवक्षणस्य पीतये ॥२५॥

हे इन्द्रदेव ! हर्षदायी सोमरसको पान गर्नका लागि मयुरको वर्ण र सेतो पिठ्युँ भएका घोडाले तिमीलाई सुनौलो रथमा राखेर यहाँ ल्याऊन्।

पिबा त्वस्य गिर्वणः सुतस्य पूर्वपा इव।
परिष्कृतस्य रसिन इयमासुतिश्चारुर्मदाय पत्यते ॥२६॥

हे स्तुत्य इन्द्रदेव ! तिमी सर्वप्रथम यो अत्यन्त आनन्ददायक शोधित सोमरस पान गर।

य एको अस्ति दंसना महाँ उग्रो अभि व्रतैः।
गमत्स शिप्री न स योषदा गमद्धवं न परि वर्जति ॥२७॥

एक्लै शत्रु परास्त गर्ने महान् पराक्रमी, अति उग्र र व्रत पालनका कारण सर्वश्रेष्ठ इन्द्रदेव हामीकहाँ आऊन्। उनी हामीबाट कहिल्यै पर नहोऊन्, हाम्रा यज्ञमा आएर सधैं विद्यमान रहून्।

त्वं पुरं चरिष्ण्वं वधैः शुष्णस्य सं पिणक्।
त्वं भा अनु चरो अध द्विता यदिन्द्र हव्यो भुवः ॥२८॥

हे प्रकाशमान इन्द्रदेव ! यहाँसम्म पिछा गर्दै शुष्ण नामका शत्रुको हिँड्नेडुल्ने आवास वज्रले ध्वस्त गरायौ। होताहरूले आह्वान योग्य भएका तिमी प्रशंसनीय भयौ।

मम त्वा सूर उदिते मम मध्यन्दिने दिवः।
मम प्रपित्वे अपिशर्वरे वसवा स्तोमासो अवृत्सत ॥२९॥

सबैका पालक हे इन्द्रदेव ! सूर्योदयका समयमा, मध्याह्न कालमा, दिनका अन्त्यमा र रात्रिका प्रारम्भमा हाम्रो स्तवन तिमीलाई प्राप्त होस्।

स्तुहि स्तुहीदेते घा ते मंहिष्ठासो मघोनाम्।
निन्दिताश्वः प्रपथी परमज्या मघस्य मेध्यातिथे ॥३०॥

हे मेधातिथि ! तिमीलाई हामी सबैभन्दा बढी सम्पत्ति प्रदान गर्दछौं। हाम्रा बलले नै अर्कालाई होच्याउने अश्व र श्रेष्ठ आयुध तिमीलाई प्राप्त भएका छन्। त्यसैले तिमी बारम्बार स्तुति गर।

आ यदश्वान्वनन्वतः श्रद्धयाहं रथे रूहम्।
उत वामस्य वसुनश्चिकेतति यो अस्ति याद्वः पशुः ॥३१॥

हे मेधातिथि ! नम्रता र श्रद्धापूर्वक हामीले तिम्रा रथमा अश्व योजित गऱ्यौं। पशुधनले सम्पन्न यदुका वंशमा उत्पन्न तिमीलाई धेरै धन प्रदान गरेका छौं, स्तुति गर।

य ऋज्रा मह्यं मामहे सह त्वचा हिरण्यया।
एष विश्वान्यभ्यस्तु सौभगासङ्गस्य स्वनद्रथः ॥३२॥

राजर्षि आसङ्गले मलाई सुनौलो आवरणसहित धेरै धन प्रदान गरेका छन्। उनी शब्दायमान रथयुक्त भएर शत्रुको व्यापक धनवैभवमाथि विजय प्राप्त गरुन्।

अध प्लायोगिरति दासदन्यानासङ्गो अग्ने दशभिः सहस्रैः।
अधोक्षणो दश मह्यं रूशन्तो नडाइव सरसो निरतिष्ठन् ॥३३॥

हे अग्निदेव ! आसङ्गले दस हजार गाई प्रदान गरे। त्यसबाट उनी अन्य दानीभन्दा सर्वोच्च भए। हामीलाई दान गरेको त्यो दस हजार बलिया गाईरूपी धन अब तलाउका किनारमा उम्रेको बेतघारीझैं धेरै मात्रामा मौलाओस्।

अन्वस्य स्थूरं ददृशे पुरस्तादनस्थ ऊरुरवरम्बमाणः।
शश्वती नार्यभिचक्ष्याह सुभद्रमर्य भोजनं बिभर्षि ॥३४॥

हे अति सौभाग्यशाली र सर्वश्रेष्ठ स्वामी ! तिम्रो हृष्टपुष्ट शक्तिशाली विशाल शरीर अति सुन्दर छ।

[सूक्त – २]

**ऋषि** – मेधातिथि काण्व आङ्गिरस। **देवता** – इन्द्र विभिन्दु। **छन्द** – गायत्री अनुष्टुप्।

इदं वसो सुतमन्धः पिबा सुपूर्णमुदरम्। अनाभयिन्ररिमा ते ॥१॥

नडराउने, ऐश्वर्यवान् हे इन्द्रदेव ! तिमी पेलेर तयार गरेको सोमरस ग्रहण गरेर पूर्ण रूपले सन्तुष्ट होऊ। तिमीलाई आनन्दित गर्नका लागि यो सोमरस अर्पित छ।

नृभिर्धूतः सुतो अश्नैरव्यो वारैः परिपूतः। अश्वो न निक्तो नदीषु ॥२॥

जलाशयमा नुहाइदिएर घोडा सफा पारेझैं स्वच्छ ढुङ्गाले पेल्दै चालनीले छानेर याजकहरूले यो सोमरस तयार गरेका छन्।

तं ते यवं यथा गोभिः स्वादुमर्कम श्रीणन्तः। इन्द्र त्वास्मिन्त्सधमादे ॥३॥

हे इन्द्रदेव ! गाईको दुध मिसाएर शोधित, पुरोडाशजस्तो यो मधुर सोमरस तिम्रा लागि तयार गरेका छौं। आनन्ददायी सोमपानका लागि तिमीलाई हामी आह्वान गर्दछौं।

इन्द्र इत्सोमपा एक इन्द्रः सुतपा विश्वायुः। अन्तर्देवान् मर्त्यांश्च ॥४॥

देवता र मानिसमा केवल इन्द्रदेव नै सोमपान गर्नका लागि अधिकारयुक्त छन्। सोमरस पिउने इन्द्रदेव दीर्घजीवी हुन्।

न यं शुक्रो न दुराशीर्न तृप्रा उरुव्यचसम्। अपस्पृण्वते सुहार्दम् ॥५॥

इन्द्रदेवलाई सामान्य सोमरस, क्षीरयुक्त सोमरस वा तृप्तकारी सोमरसले रुष्ट गराउँदैन। विशाल तथा श्रेष्ठ हृदय भएका इन्द्रदेवको प्रार्थना हामी गर्दछौं।

गोभिर्यदीमन्ये अस्मन्मृगं न व्रा मृगयन्ते। अभित्सरन्ति धेनुभिः ॥६॥

जाल र बाजा लिएर सिकारीले मृग खोजेझैं हामी ऋत्विक् र यजमानहरू गाईको दुध र स्तुतिसँगै इन्द्रदेवलाई खोज्दछौं।

त्रय इन्द्रस्य सोमाः सुतासः सन्तु देवस्य। स्वे क्षये सुतपाव्नः ॥७॥

याजकहरू दिनको तीन पटक यज्ञमण्डपमा इन्द्रदेवको तिर्खा मेटाउन पेलेको सोमरस तयार राखून्।

त्रयः कोशासः श्चोतन्ति तिस्रश्चम्वः सुपूर्णाः। समाने अधि भार्मन् ॥८॥

समान रूपले पोषण गर्न स्थापित भएका यज्ञमा तीन कलशबाट सोमरस खन्याइन्छ र भरेर राखेको सुरोले आहुति दिइन्छ।

**शुचिरसि पुरुनिः ष्ठाः क्षीरैर्मध्यत आशीर्तः । दध्ना मन्दिष्ठः शूरस्य ॥९॥**

हे सोम ! तिमी पवित्र छौ र अनेकौंका अन्तःकरणमा विद्यमान रहन्छौ। तिमी दुध र दहीमा मिसिएर शूरवीर इन्द्रदेवलाई आनन्द प्रदान गर्दछौ।

**इमे त इन्द्र सोमास्तीव्रा अस्मे सुतासः । शुक्रा आशिरं याचन्ते ॥१०॥**

हे इन्द्रदेव ! तिम्रो सन्तुष्टिका लागि हामीले पेलेर तयार पारेको तीतो र टर्रो सोमरसले दुध आदि मिसाउनुपर्ने आवश्यकता अनुभव गर्दछ।

**ताँ आशिरं पुरोडाशमिन्द्रेमं सोमं श्रीणीहि। रेवन्तं हि त्वा शृणोमि ॥११॥**

हे इन्द्रदेव ! तिमी ऐश्वर्यवान् छौ, त्यसैले हामीले दिएको पुरोडाश र दुध मिसेको सोमरस पान गरेर हामीलाई ऐश्वर्य प्रदान गर।

**हृत्सु पीतासो युध्यन्ते दुर्मदासो न सुरायाम्। ऊधर्न नग्ना जरन्ते ॥१२॥**

मदिरा पिएर मातिएका मानिस आपसमा झगडा गरेझैं हे इन्द्रदेव ! यो सोमरस तिम्रा हृदयमा युद्ध गर्दछ। थुनभरि दुध हुने गाईको दुनियाँले प्रशंसा गरेझैं प्रार्थना गर्ने मानिस तिम्रो प्रशंसा गर्दछन्।

**रेवाँ इद्रेवतः स्तोता स्यात्त्वावतो मघोनः। प्रेदु हरिवः श्रुतस्य ॥१३॥**

हे विभूतिसम्पन्न इन्द्रदेव ! तिम्रो स्तुति गर्नेले पक्का पनि धन पाउँछ। तिम्रो उपासक सबै ऐश्वर्यले युक्त हुन्छ।

**उक्थं चन शस्यमानमगोररिरा चिकेत। न गायत्रं गीयमानम् ॥१४॥**

इन्द्रदेव स्तुति नगर्नेहरूका शत्रु हुन्। स्तोताले स्तोत्र पढेको उनलाई राम्ररी थाहा छ। उनी सामवेदको गाना पनि सुन्दछन् र बुझ्दछन् पनि।

**मा न इन्द्र पीयत्नवे मा शर्धते परा दाः। शिक्षा शचीवः शचीभिः ॥१५॥**

हे इन्द्रदेव ! हिंस्रक शत्रु र उपेक्षा गर्नेहरूका आश्रयमा हामीलाई नछोड। आफ्ना बलले अभीष्ट ऐश्वर्य प्रदान गर।

**वयमु त्वा तदिदर्था इन्द्र त्वायन्तः सखायः। कण्वा उक्थेभिर्जरन्ते ॥१६॥**

हे इन्द्रदेव ! तिमीसित मित्रता गर्ने रहर भएर हामी कण्वका वंशज याजकहरू र सबै हाम्रा पुत्रपौत्रादि स्तोत्रले तिम्रो स्तुति गर्दछौं।

**न घेमन्यदा पपन वज्रिन्नपसो नविष्टौ। तवेदु स्तोमं चिकेत ॥१७॥**

हे वज्रधारी इन्द्रदेव ! यज्ञकर्ममा तिम्रो स्तुति गर्नुका अतिरिक्त हामी अन्य कसैको स्तुति गर्दैनौं। स्तोत्रले हामी तिम्रै स्तुति गर्दछौं।

**इच्छन्ति देवाः सुन्वन्तं न स्वप्नाय स्पृहयन्ति। यन्ति प्रमादमतन्द्राः ॥१८॥**

यज्ञका निम्ति सोमरस तयार गर्ने साधकसित देवता प्रसन्न रहन्छन्। उनीहरूकै कामना गर्दछन्। आलस्यरहित देवताहरू आनन्द प्रदान गर्ने सोमरस सधैं पान गर्दछन्।

**ओ षु प्र याहि वाजेभिर्मा हृणीथा अभ्य१ स्मान्। महाँ इव युवजानिः ॥१९॥**

हे इन्द्रदेव ! विचारशील पुरुषले आफ्नी पत्नीसित क्रोध नगरेझैं हामीमाथि तिमी पनि क्रोध नगर। हाम्रा यज्ञमा तिमी घोडामा आऊ।

**मो ष्व१द्य दुर्हणावान्त्सायं करदारे अस्मत्। अश्रीरइव जामाता ॥२०॥**

शत्रुमाथि असह्य प्रहार गर्ने हे इन्द्रदेव ! चाँडै हाम्रा नजिकै आऊ। श्रीहीन, बारम्बार बोलाउँदा पनि नआउने अभिमानी ज्वाइँजस्तो बेलुका आउनमा ढिलो नगर।

**विद्मा ह्यस्य वीरस्य भूरिदावरीं सुमतिम्। त्रिषु जातस्य मनांसि ॥२१॥**

प्रचुर सम्पत्ति प्रदान गर्ने, शूरवीर इन्द्रदेवको बुद्धि र तीन लोकमा विख्यात उनका मन हामी राम्ररी जान्दछौं।

**आ तू षिञ्च कण्वमन्तं न घा विद्म शवसानात्। यशस्तरं शतमूतेः ॥२२॥**

हे याजकहरू हो ! कण्वका वंशज ऋषिहरू इन्द्रदेवलाई सोमरसले अभिषेक गर्दछन्। अत्यन्त शक्तिशाली र अनेकौं प्रकारका रक्षण साधनले सम्पन्न इन्द्रदेवभन्दा अधिक कीर्तिमान् देवताका विषयमा हामीलाई थाहा छैन।

**ज्येष्ठेन सोतरिन्द्राय सोमं वीराय शक्राय। भरा पिबन्नर्याय ॥२३॥**

हे सोमरस तयार गर्ने याजक हो ! सबैभन्दा अधिक महान्, पराक्रमी, बलशाली र श्रेष्ठ इन्द्रदेवलाई सोमरस प्रदान गर। उनले प्रसन्नतापूर्वक त्यो पान गरुन्।

**यो वेदिष्ठो अव्यथिष्वश्वावन्तं जरितृभ्यः। वाजं स्तोतृभ्यो गोमन्तम् ॥२४॥**

यज्ञमण्डपमा इन्द्रदेव आएपछि याजकहरू कहिल्यै दुःखी हुँदैनन्। ती देवताले प्रार्थना गर्नेलाई अश्व, गाई आदि धन प्रदान गर्दछन्।

**पन्यंपन्यमित्सोतार आ धावत मद्याय। सोमं वीराय शूराय ॥२५॥**

हे सोम शोधन गर्न लागेका याजक हो ! पराक्रमी, शूरवीर इन्द्रदेवका लागि आनन्द दिने खालको सोमरस अर्पित गर।

**पाता वृत्रहा सुतमा घा गमन्नारे अस्मत्। नि यमते शतमूतिः ॥२६॥**

सयौं किसिमका साधनले हाम्रो रक्षा गर्ने, वृत्रासुर हनन गर्ने, सोमरस पान गर्ने हे इन्द्रदेव ! हाम्रा यज्ञमा अवश्य आऊ र शत्रुलाई हामीभन्दा पर पुऱ्याऊ।

**एह हरी ब्रह्मयुजा शग्मा वक्षतः सखायम्। गीर्भिः श्रुतं गिर्वणसम् ॥२७॥**

सङ्केत मात्रैले रथमा नारिने, सुखवर्द्धक दुई अश्वले सबैलाई आश्रय दिने, मित्ररूपी इन्द्रदेवलाई स्तुति गानका साथ यज्ञमण्डपमा लिएर आइपुगून्।

**स्वादवः सोमा आ याहि श्रीताः सोमा आ याहि।**
**शिप्रिन्नृषीवः शचीवो नायमच्छा सधमादम् ॥२८॥**

हे सौन्दर्यवान, ज्ञानवान् र वीर्यवान् इन्द्रदेव ! तिमी यहाँ आऊ। सोमरस पेलेर तयार भएको छ। तिम्रा उपासकले तिमीलाई बोलाउँदै छन्, त्यसैले तिमी यहाँ आऊ।

**स्तुतश्च यास्त्वा वर्धन्ति महे राधसे नृम्णाय। इन्द्र कारिणं वृधन्तः ॥२९॥**

हे कर्मशील इन्द्रदेव ! स्तुति गर्ने समस्त साधकहरू मन्त्रले तिमीलाई समृद्ध गराउँछन्। तिमी स्तुति ग्रहण गरेर हामीलाई श्रेष्ठ हितकारी धन प्रदान गर।

**गिरश्च यास्ते गिर्वाह उक्था च तुभ्यं तानि। सत्रा दधिरे शवांसि ॥३०॥**

स्तुतिमन्त्रसँगै आह्वान गर्न योग्य र प्रशंसनीय हे इन्द्रदेव ! तिम्रा लागि गरिने सबै स्तुति एकसाथ मिलेर तिमीमा बल उत्पन्न गराउँछन्।

**एवेदेष तुविकूर्मिर्वाजाँ एको वज्रहस्तः। सनादमृक्तो दयते ॥३१॥**

हे इन्द्रदेव ! तिमी विभिन्न खालका श्रेष्ठ कर्म गर्ने र अद्वितीय वज्रधारी हौ। तिमी शत्रुका लागि अजेय भएर यजमानका लागि अन्न आदि प्रदान गर्दछौ।

**हन्ता वृत्रं दक्षिणेनेन्द्रः पुरू पुरुहूतः। महान्महीभिः शचीभिः ॥३२॥**

कुशलतापूर्वक वृत्रलाई मार्ने विराट् शक्तिका कारण इन्द्रदेव महान् भएका छन्। सर्वव्यापी इन्द्रदेवलाई सबै प्राणी आफ्नो रक्षाका लागि बोलाउँछन्।

**यस्मिन् विश्वाश्चर्षणय उत च्यौत्ना ज्रयांसि च। अनु घेन्मन्दी मघोनः ॥३३॥**

इन्द्रदेवमा विश्वका समस्त प्राणीको सम्पूर्ण बल स्थित छ। त्यस्ता ऐश्वर्यवान् देवतालाई निश्चित रूपले प्रसन्न गर्नुपर्दछ।

**एष एतानि चकारेन्द्रो विश्वा योऽति शृण्वे। वाजदावा मघोनाम् ॥३४॥**

इन्द्रदेवलाई अत्यन्त बलशाली र शूरवीरका रूपमा सबैले चिन्दछन्। उनैले सबै पराक्रमपूर्ण कार्य गरेका हुन्। सबै ऐश्वर्यवान्हरूलाई अन्न प्रदान गर्ने उनै हुन्।

**प्रभर्ता रथं गव्यन्तमपाकाच्चिद्यमवति। इनो वसु स हि वोळ्हा ॥३५॥**

सबैका पोषक इन्द्रदेव वेगपूर्वक दौडँदै आफ्नो रथ शत्रुबाट जोगाउँछनन्। ती इन्द्रदेव सबैका स्वामी भएर धन प्राप्त गर्दछन्।

**सनिता विप्रो अर्वद्भिर्हन्ता वृत्रं नृभिः शूरः। सत्योऽविता विधन्तम् ॥३६॥**

ज्ञानी इन्द्रदेव आफ्ना अश्वले सबै गन्तव्यस्थलमा पुग्छन् र शूरवीर नेताका सहायताले वृत्रको वध गर्दछन्। ती सत्यरूपी इन्द्रदेवले आफ्ना सेवकको रक्षा गर्दछन्।

**यजध्वैनं प्रियमेधा इन्द्रं सत्राचा मनसा। यो भूत्सोमैः सत्यमद्वा ॥३७॥**

हे प्रियमेध ! सोमपान गरेर इन्द्रदेव वास्तविक शक्तिले सम्पन्न हुन्छन्। त्यसैले मन लगाएर उनका निमित्त यज्ञ गर।

**गाथश्रवसं सत्पतिं श्रवस्कामं पुरुत्मानम्। कण्वासो गात वाजिनम् ॥३८॥**

हे कण्वका पुत्र हो ! सज्जनलाई पालन गर्ने, कीर्तिको कामना गर्ने; दृढ आत्मबल भएका र यशोगान सर्वत्र हुने इन्द्रदेवलाई स्तुति गर।

**य ऋते चिद्गास्पदेभ्यो दात् सखा नृभ्यः शचीवान्। ये अस्मिन्काममश्रियन् ॥**

देवताहरू इन्द्रदेवमाथि आफ्नो कामना आश्रित गराउँछन्। उनै श्रेष्ठ कर्म भएका, सखारूप इन्द्रदेवले पाइला मात्रै देखिँदा पनि गाई खोजिदिए।

**इत्था धीवन्तमद्रिवः काण्वं मेध्यातिथिम्। मेषो भूतोऽभि यन्नयः ॥४०॥**

हे वज्रधारी इन्द्रदेव ! यस किसिमका स्तुति गर्ने, कण्वका ज्ञानी पुत्र मेधातिथिलाई मेष रूपमा प्राप्त गर्‍यौ।

**शिक्षा विभिन्दो अस्मै चत्वार्ययुता ददत्। अष्टा परः सहस्रा ॥४१॥**

हे विभिन्द ! यी ऋषिका लागि चालीस हजार सङ्ख्यामा धन प्रदान गर्‍यौ। त्यसका अतिरिक्त तिमीहरूले फेरि आठ हजारको सङ्ख्यामा धन प्रदान गर्‍यौ।

**उत सु त्ये पयोवृधा माकी रणस्य नप्त्या। जनित्वनाय मामहे ॥४२॥**

जलवर्षा गराउने, सबैको निर्माण गर्ने, याजकलाई माथि उठाउने, पृथ्वी तथा द्युलोकका पूर्वोक्त चालीस हजार र आठ हजार धन उत्पन्न गराउनेलाई हामी स्तुति गर्दछौं।

[सूक्त - ३]

**ऋषि** – मेध्यातिथि काण्व। **देवता** – इन्द्र। **छन्द** – प्रगाथ अनुष्टुप् गायत्री बृहती।

**पिबा सुतस्य रसिनो मत्स्वा न इन्द्र गोमतः।**
**आपिर्नो बोधि सधमाद्यो वृधेऽस्माँ अवन्तु ते धियः ॥१॥**

हे इन्द्रदेव ! गाईको दुधमा मिसेर रसका रूपमा हामीले सोमरस शोधन गरेका छौं, पान गर र प्रफुल्लित होऊ। हाम्रा कार्यमा सङ्गठित रूपमा सहयोगी हुँदै हामीलाई उन्नतिको मार्ग देखाऊ। तिम्रो बुद्धि हाम्रो संरक्षक बनोस्।

**भूयाम ते सुमतौ वाजिनो वयं मा नः स्तरभिमातये।**
**अस्माञ्चित्राभिरवतादभिष्टिभिरा नः सुम्नेषु यामय ॥२॥**

हे इन्द्रदेव ! तिम्रो अनुकूल उत्तम बुद्धिले प्रेरित भएर हामी सामर्थ्य प्राप्त गरौं। शत्रुले हामीलाई नष्ट नगरुन्। समार्थ्यशाली रक्षणसाधनले हाम्रो रक्षा गर्दै सुखसमृद्धि बढाऊ।

**इमा उ त्वा पुरूवसो गिरो वर्धन्तु या मम।**
**पावकवर्णाः शुचयो विपश्चितोऽभि स्तोमैरनूषत ॥३॥**

हे ऐश्वर्यवान् इन्द्रदेव हाम्रा स्तुतिले तिम्रो कीर्ति बढोस्। अग्निजस्तै प्रखर, पवित्र आत्मा र विद्वान् साधकहरू स्तोत्रले तिम्रो प्रार्थना गर्दछन्।

**अयं सहस्रमृषिभिः सहस्कृतः समुद्र इव पप्रथे।**
**सत्यः सो अस्य महिमा गृणे शवो यज्ञेषु विप्रराज्ये ॥४॥**

हजारौं ऋषिका स्तुतिको बल पाएका प्रख्यात यज्ञदेव समुद्रजस्तै विस्तृत हुन्छन्। यिनको सत्यनिष्ठा र शक्ति प्रसिद्ध छ। यज्ञमा स्तोत्रगान गर्दै यिनको सम्मान गरौं।

**इन्द्रमिद्देवतातय इन्द्रं प्रयत्यध्वरे।**
**इन्द्रं समीके वनिनो हवामह इन्द्रं धनस्य सातये ॥५॥**

दैवी प्रयोजनका लागि गरेका यज्ञमा हामी याजकहरू प्रारम्भ र समाप्त हुने वेलामा इन्द्रदेवलाई आह्वान गर्दछौं। धन प्राप्तिका कामनाले पनि इन्द्रदेवलाई आह्वान गर्दछौं।

**इन्द्रो मह्ना रोदसी पप्रथच्छव इन्द्रः सूर्यमरोचयत्।**
**इन्द्रे ह विश्वा भुवनानि येमिर इन्द्रे सुवानास इन्दवः ॥६॥**

इन्द्रदेवले सबै लोकलाई आश्रय दिन्छन्। त्यस्ता इन्द्रदेवलाई यो सोमरस समर्पित छ।

अभि त्वा पूर्वपीतय इन्द्र स्तोमेभिरायवः ।
समीचीनास ऋभवः समस्वरन् रुद्रा गृणन्त पूर्व्यम् ॥७॥

हे इन्द्रदेव ! उहिलेदेखि नै ऋभु र रुद्रहरूले तिम्रो स्तुति गर्दै आएका छन्। याजकहरू स्तुति गर्दै सोमपान गर्नका लागि सर्वप्रथम तिमीलाई नै बोलाउँछन्।

अस्येदिन्द्रो वावृधे वृष्ण्यं शवो मदे सुतस्य विष्णवि ।
अद्या तमस्य महिमानमायवोऽनु ष्टुवन्ति पूर्वथा ॥८॥

इन्द्रदेव सोमरस पान गरेर अत्यधिक आनन्दित हुँदै यजमानको वीर्य र बल बढाउँछन्, त्यसैले स्तोताहरू आज पनि इन्द्रदेवकै महिमा वर्णन गर्दछन्।

तत्त्वा यामि सुवीर्यं तद् ब्रह्म पूर्वचित्तये ।
येना यतिभ्यो भृगवे धने हिते येन प्रस्कण्वमाविथ ॥९॥

हे इन्द्रदेव ! जुन शक्तिका कारण तिमीले यति र भृगु ऋषिलाई धन प्रदान गरेका थियौ तथा जुन ज्ञानले ज्ञानीहरूको रक्षा गरेका थियौ, उही ज्ञान र बल प्राप्त गर्नका लागि हामी सबैभन्दा पहिले तिमीसित प्रार्थना गर्दछौं।

येना समुद्रमसृजो महीरपस्तदिन्द्र वृष्णि ते शवः ।
सद्यः सो अस्य महिमा न सन्नशे यं क्षोणीरनुचक्रदे ॥१०॥

हे इन्द्रदेव ! जुन शक्तिले तिमीले सुमद्र र विशाल नदी निर्माण गरेका थियौ, त्यही शक्तिले हाम्रो इच्छा पूरा गराउन सक्छ। तिम्रा जुन महिमाको अनुसरण द्युलोक र पृथिवीले गर्दछन्, त्यो बारपार नभएको समुद्रजस्तै छ।

शग्धी न इन्द्र यत्त्वा रयिं यामि सुवीर्यम् ।
शग्धि वाजाय प्रथमं सिषासते शग्धि स्तोमाय पूर्व्य ॥११॥

हे इन्द्रदेव ! श्रेष्ठ पराक्रमले युक्त ऐश्वर्यको कामना हामी गर्दछौं, तिमी प्रदान गर। अन्नको इच्छा गर्ने मानिसलाई सबैभन्दा पहिले अन्न प्रदान गर। हे इन्द्रदेव ! तिमी स्तुतिकर्तालाई पनि धनधान्य प्रदान गर।

शग्धी नो अस्य यद्ध पौरमाविथ धिय इन्द्र सिषासतः ।
शग्धि यथा रुशमं श्यावकं कृपमिन्द्र प्रावः स्वर्णरम् ॥१२॥

हे इन्द्रदेव ! जुन शक्तिले तिमीले पुरुका पुत्रको रक्षा गरेका थियौ, उही शक्ति विवेकले काम गर्ने मानिसले पाऊन्। जुन शक्तिले तिमीले तेजस्वी धनदाता रुशम, श्यावक र कृपको रक्षा गरेका थियौ, उसै शक्तिले हामीलाई पनि सुरक्षा गर।

कन्नव्यो अतसीनां तुरो गृणीत मर्त्यः ।
न ही न्वस्य महिमानमिन्द्रियं स्वर्गृणन्त आनशुः ॥१३॥

उहिलेका स्तुति गर्ने ऋषिले त इन्द्रदेवको महिमाशाली शक्ति चित्र सकेनन् भने आजका स्तोताले कुन खालको नयाँ स्तुति गर्लान् र ?

कदु स्तुवन्त ऋतयन्त देवत ऋषिः को विप्र ओहते ।
कदा हवं मघवन्निन्द्र सुन्वतः कदु स्तुवत आ गमः ॥१४॥

हे इन्द्रदेव ! तिम्रा निमित्त यज्ञ गर्ने देवता को होलान् र तिम्रो स्तुति गरेर कृपा प्राप्त गर्ने ऋषि को होलान् ? हे धनवान् इन्द्रदेव ! तिमी सोमरस अभिषुत गर्नेहरूको स्तुति सुनेर उनीहरूकहाँ कहिले जान्छौ ?

उदु त्ये मधुमत्तमा गिरः स्तोमास ईरते ।
सत्राजितो धनसा अक्षितोतयो वाजयन्तो रथा इव ॥१५॥

वास्तविक विजय प्रदान गर्ने, ऐश्वर्य प्राप्तिका माध्यम, निरन्तरका रक्षक, मधुर स्तोत्र, यी सबै युद्धको उपकरण रथजस्तै हुन् भनिन्छ।

कण्वाइव भृगवः सूर्या इव विश्वमिद्धीतमानशुः ।
इन्द्रं स्तोमेभिर्महयन्त आयवः प्रियमेधासो अस्वरन् ॥१६॥

कण्वका गोत्रमा उत्पन्न ऋषिहरूको जस्तै स्तुति गर्दै भृगुका गोत्रमा उत्पन्न ऋषिहरूले इन्द्रदेवलाई चारैतिरबाट सूर्यका रश्मि संसारभरि भएर फैलिएझैं घेरे। यस्ता महान् इन्द्रदेवलाई प्रियमेधले स्तुति गर्दै पूजा गरे।

युक्ष्वा हि वृत्रहन्तम हरी इन्द्र परावतः।
अर्वाचीनो मघवन्त्सोमपीतय उग्र ऋष्वेभिरा गहि॥१७॥

वृत्रासुर विनाश गर्न सक्षम, रथमा आसीन, ऐश्वर्यले सम्पन्न हे इन्द्रदेव ! तिमी शक्तिले सम्पन्न भएर मरुत्हरूसँग सुदूर प्रदेशबाट हाम्रा यज्ञमा आऊ।

इमे हि ते कारवो वावशुर्धिया विप्रासो मेधसातये।
स त्वं नो मघवन्निन्द्र गिर्वणो वेनो न शृणुधी हवम्॥१८॥

हे प्रार्थनीय इन्द्रदेव ! ज्ञानबुद्धि जागृत गर्नका लागि स्तोताहरू विवेकपूर्वक साधना गर्दछन्। हे धनवान् इन्द्रदेव ! तिमी आतुर व्यक्तिले जस्तै हाम्रो स्तुति स्वीकार गर।

निरिन्द्र बृहतीभ्यो वृत्रं धनुभ्यो अस्फुरः।
निरर्बुदस्य मृगयस्य मायिनो निः पर्वतस्य गा आजः॥१९॥

हे इन्द्रदेव ! तिमीले आफ्ना विशाल धनुषले वृत्र, मायावी अर्बुद र मृगय नामका असुर वध गऱ्यौ। त्यसअतिरिक्त पर्वतले लुकाएका गाई मुक्त गरायौ।

निरग्नयो रुरुचुर्निरु सूर्यो निः सोम इन्द्रियो रसः।
निरन्तरिक्षादधमो महामहिं कृषे तदिन्द्र पौंस्यम्॥२०॥

हे इन्द्रदेव ! तिमीले आकाशबाट विशाल अहिलाई तलतिर मुन्ट्याएर आफ्नो शौर्य प्रकट गऱ्यौ। त्यसपछि अग्नि र सूर्य प्रकट भए र तिम्रो प्रिय सोम टड्कारै देखियो।

यं मे दुरिन्द्रो मरुतः पाकस्थामा कौरयाणः।
विश्वेषां त्मना शोभिष्ठमुपेव दिवि धावमानम्॥२१॥

कुरयाणका पुत्र पाकस्थामाले हामीलाई त्यही प्रदान गरे, जुन इन्द्र र मरुत्हरूले प्रदान गरेका थिए। त्यो ऐश्वर्य सबै धनमध्ये अत्यधिक सुशोभित हुँदै आलोकित हुने गतिमान् सूर्यजस्तै सुशोभित हुन्छ।

रोहितं मे पाकस्थामा सुधुरं कक्ष्यप्राम्। अदाद्रायो विबोधनम्॥२२॥

पाकस्थामाले हामीलाई श्रेष्ठ धुरामा नारिएका, राता वर्णका अश्व प्रदान गरे र ज्ञानयुक्त ऐश्वर्य पनि दिए।

यस्मा अनये दश प्रति धुरं वहन्ति वह्नयः। अस्तं वयो न तुग्र्यम्॥२३॥

वयले तुग्रका पुत्रलाई आवाससम्म पुऱ्याएझैं अन्य दसलाई पनि धुरासम्म पुऱ्याए।

आत्मा पितुस्तनूर्वास ओजोदा अभ्यञ्जनम्।
तुरीयमिद्रोहितस्य पाकस्थामानं भोजं दातारमब्रवम्॥२४॥

पिताअनुरूपका पुत्र पाकस्थामा श्रेष्ठ आवास प्रदाता र शत्रुहन्ता हुन्। यस्तो रातो तेज प्रदान गर्नेलाई हामी स्तुति गर्दछौं।

[सूक्त – ४]

ऋषि – देवातिथि काण्व। देवता – इन्द्र पूषा कुरुङ्ग। छन्द – प्रगाथ पुर उष्णिक्।

यदिन्द्र प्रागपागुदङ् न्यग्वा हूयसे नृभिः।
सिमा पुरू नृषूतो अस्यानवेऽसि प्रशर्ध तुर्वशे॥१॥

हे इन्द्रदेव ! स्तोताहरू सहायताका लागि चारैतिरबाट तिमीलाई आह्वान गर्दछन्। शत्रुनाशक हे इन्द्रदेव ! अनु र तुर्वशले तिमीलाई प्रार्थनापूर्वक बोलाउछन्।

यद्वा रुमे रुशमे श्यावके कृप इन्द्र मादयसे सचा।
कण्वासस्त्वा ब्रह्मभिः स्तोमवाहस इन्द्रा यच्छन्त्या गहि॥२॥

हे इन्द्रदेव ! रुम, रुशम, श्यावक र कृपले तिमीलाई प्रसन्न गर्दछन्। कण्वका वंशज ऋषिहरू विभिन्न स्तोत्रले प्रभावित गर्ने प्रयास गर्छन्। हे इन्द्रदेव ! तिमी यज्ञमा आऊ।

यथा गौरो अपा कृतं तृष्यन्नेत्यवेरिणम्।
आपित्वे नः प्रपित्वे तूयमा गहि कण्वेषु सु सचा पिब॥३॥

हे इन्द्रदेव ! तिर्खाएको गौर मृग तलाउनजिक कुदेर गएझैं तिमी हाम्रा सहचर बनेर यज्ञमा आऊ र हामी कण्वपुत्रहरूका यज्ञमा सोमपान गरेर सन्तुष्ट होऊ।

मन्दन्तु त्वा मघवन्निन्द्रेन्दवो राधोदेयाय सुन्वते।
आमुष्या सोममपिबश्चमू सुतं ज्येष्ठं तद्दधिषे सहः ॥४॥

हे ऐश्वर्यवान् इन्द्रदेव ! सोमयज्ञ सम्पन्न गर्ने साधकलाई वैभव प्रदान गर्नका लागि सोमरसले तिमीलाई आनन्दित पारोस्। पात्रमा राखिएको शोधित सोमरस पिएर तिमी श्रेष्ठ बलले युक्त हुन्छौ।

प्र चक्रे सहसा सहो बभञ्ज मन्युमोजसा।
विश्वे त इन्द्र पृतनायवो यहो नि वृक्षाइव येमिरे ॥५॥

तिमीले शक्ति र तेजले शत्रुलाई वशीभूत गरेर उनीहरूको क्रोध र अहङ्कार नष्ट गर्‍यौ। त्यसपछि ती सबैलाई रुखझैं जड र निष्क्रिय बनायौ।

सहस्रेणेव सचते यवीयुधा यस्त आनडुपस्तुतिम्।
पुत्रं प्रावर्गं कृणुते सुवीर्ये दाश्नोति नम उक्तिभिः ॥६॥

हे इन्द्रदेव ! प्रार्थना गर्ने व्यक्तिलाई तिमी हजारौं शस्त्रास्त्र प्रदान गर्दछौ। विनम्र भावले तिमीलाई आहुति प्रदान गर्ने व्यक्तिले पराक्रमी र शत्रुविध्वंशक पुत्र प्राप्त गर्दछ।

मा भेम मा श्रमिष्मोग्रस्य सख्ये तव।
महत्ते वृष्णो अभिचक्ष्यं कृतं पश्येम तुर्वशं यदुम् ॥७॥

महान् बलशाली हे इन्द्रदेव ! तिम्रा मित्रताका प्रभावले हामी कसैसित भयभीत नहोऔं र न त कहिल्यै थाकौं। उपासकहरूको कामना पूरा गराउने हे देव ! तिम्रो सत्कार्य प्रशंसनीय छ। हामी तुर्वश र यदुलाई पनि प्रसन्नताका स्थितिमा देखौं।

सव्यामनु स्फिग्यं वावसे वृषा न दानो अस्य रोषति।
मध्वा सम्पृक्ताः सारघेण धेनवस्तूयमेहि द्रवा पिब ॥८॥

हे सर्वशक्तिमान् इन्द्रदेव ! तिमी आफ्ना बायाँ हातले सजिलै सबैलाई आश्रय दिन्छौ। नष्टभ्रष्ट गर्ने क्रूर शत्रुले तिमीलाई कष्ट दिन सक्दैन। महजस्तै मिठो दुधयुक्त र सुखदायी सोम तिम्रा लागि प्रस्तुत छ। शीघ्र यज्ञवेदीका समीप आऊ र पान गर।

अश्वी रथी सुरूप इद् गोमाँ इदिन्द्र ते सखा।
श्वात्रभाजा वयसा सचते सदा चन्द्रो याति सभामुप ॥९॥

हे इन्द्रदेव ! तिमीलाई आफ्नो मित्र बनाउने मानिस रथयुक्त सौन्दर्यवान्, ऐश्वर्यवान् र धनधान्यले सधैं पूर्ण रहन्छ। सधैं श्रेष्ठ आभूषणले सुसज्जित भएर सबैलाई प्रसन्नता दिने सभागृह आदिमा जान्छ।

ऋश्यो न तृष्यन्नवपानमा गहि पिबा सोमं वशाँ अनु।
निमेघमानो मघवन्दिवेदिव ओजिष्ठं दधिषे सहः ॥१०॥

हे धनवान् इन्द्रदेव ! देख्नमा राम्रो तर तिर्खाएको हरिणजस्तै छौ। सोमपात्र नजिक आऊ मन लागेजति सोमपान गर। तिमी नित्य वर्षा गर्दै ओजले सम्पन्न होऊ।

अध्वर्यो द्रावया त्वं सोममिन्द्रः पिपासति।
उप नूनं युयुजे वृषणा हरी आ च जगाम वृत्रहा ॥११॥

बलवान् अश्व हुने रथमा आरूढ, वृत्रसंहारक इन्द्रदेवको आगमन भयो। हे अध्वर्युहरू हो ! तीं सोमपान गर्न इच्छुक इन्द्रदेवका लागि चाँडै सोमरस तयार गर।

स्वयं चित्स मन्यते दाशुरिर्जनो यत्रा सोमस्य तृम्पसि।
इदं ते अन्नं युज्यं समुक्षितं तस्येहि प्र द्रवा पिब ॥१२॥

हे इन्द्रदेव ! तिमीलाई घरमा ल्याएर सोमरस पानले सन्तुष्ट गराउने दानी व्यक्तिले आफूलाई महान् ठान्दछ। हे इन्द्रदेव ! तिम्रा लागि सोमरसरूपी श्रेष्ठ आहार तयार छ, आएर त्यो पान गर।

रथेष्ठायाध्वर्यवः सोममिन्द्राय सोतन।
अधि ब्रध्नस्याद्रयो वि चक्षते सुन्वन्तो दाश्वध्वरम् ॥१३॥

हे अध्वर्युहरू हो ! रथमा आरुढ इन्द्रदेवका निम्ति सोमरस पेल। सोमरस पेल्ने गरेका अग्लो ठाउँका ढुङ्गा देख्दा याजकहरू यज्ञ सम्पन्न गर्दै छन् भन्ने कुरो थाहा हुन्छ।

उप ब्रध्नं वावाता वृषणा हरी इन्द्रमपसु वक्षतः।
अर्वाञ्चं त्वा सप्तयोऽध्वरश्रियो वहन्तु सवनेदुप ॥१४॥

अन्तरिक्षमा विचरण गर्ने दुई वटा शक्तिशाली घोडा हाम्रा यस यज्ञमा इन्द्रदेवलाई लिएर आऊन्। हे इन्द्रदेव ! यज्ञको सेवा गर्ने र सधैँका गतिशील घोडाले तिमीलाई ल्याऊन्।

प्र पूषणं वृणीमहे युज्याय पुरूवसुम्।
स शक्र शिक्ष पुरुहूत नो धिया तुजे राये विमोचन ॥१५॥

अनेकौं तिरबाट बोलाइने हे पूषादेव ! तिमी ज्यादै ऐश्वर्यवान् र सबैका पोषक हौ। हामी श्रेष्ठ मित्रभावले आह्वान गर्दछौं। धन देऊ र शत्रु नष्ट गरेर विपद्‌बाट मुक्ति प्रदान गर।

सं न शिशीहि भुरिजोरिव क्षुरं रास्व रायो विमोचन।
त्वे तन्नः सुवेदमुस्रियं वसु यं त्वं हिनोषि मर्त्यम् ॥१६॥

सङ्कटबाट छुटाउने हे पूषादेव ! हाम्रो मेधा हातको छुराजस्तै धारिलो बनाऊ र हामीलाई ऐश्वर्य प्रदान गर। हे इन्द्रदेव ! तिमीले अन्य मानिसलाई प्रदान गर्ने ऐश्वर्य र गाईरूपी धन हामीलाई पनि प्रदान गर।

वेमि त्वा पूषन्नृञ्जसे वेमि स्तोतव आघृणे।
न तस्य वेम्यरणं हि तद्वसो स्तुषे पज्राय साम्ने ॥१७॥

सबैका पालक हे पूषादेव ! तिमी शत्रुविनाशक र सज्जनका हर्षप्रदायक हौ। हामी तिमीलाई प्रसन्न गर्न चाहन्छौँ। हे तेजस्वी इन्द्रदेव ! हामी केवल तिमीलाई उपासना गर्न चाहन्छौँ, किनभने तिमीबाहेक अन्य कुनै देवताको उपासना हितकारी हुँदैन। हे वास प्रदान गर्ने इन्द्रदेव ! तिमी स्तुतिकर्ता पज्रलाई जस्तै हामीलाई पनि धन प्रदान गर।

परा गावो यवसं कच्चिदाघृणे नित्यं रेक्णो अमर्त्य।
अस्माकं पूषन्नविता शिवो भव मंहिष्ठो वाजसातये ॥१८॥

हे तेजस्वी इन्द्रदेव ! हाम्रा गाई चर्दै पर पुगेछन् भने त्यहाँ सुरक्षित राख। हे पूषादेव ! तिमी हाम्रा रक्षक र कल्याणकारी हौ। हामीलाई प्रचुर अन्न र धन प्रदान गर।

स्थूरं राधः शताश्वं कुरुङ्गस्य दिविष्टिषु।
राज्ञस्त्वेषस्य सुभगस्य रातिषु तुर्वशेष्वमन्महि ॥१९॥

प्रखरताले सम्पन्न श्रेष्ठ धन भएका कुरुङ्गले दिव्य दान गर्दा हामीलाई सयौं अश्वयुक्त प्रचुर धन प्राप्त भयो।

धीभिः सातानि काण्वस्य वाजिनः प्रियमेधैरभिद्युभिः।
षष्टिं सहस्रानु निर्मजामजे निर्यूथानि गवामृषिः ॥२०॥

हामीले साठी हजार पवित्र गाई कण्वका पुत्र मेधातिथि, उनका स्तोता र प्रियमेधबाट प्राप्त गरेका थियौं।

वृक्षाश्चिन्मे अभिपित्वे अरारणुः। गां भजन्तमेहनाऽश्वं भजन्त मेहना ॥२१॥

हामीले पहिले जुन साठी हजार धन पायौं, त्यो देखेर वृक्षले हर्षको ध्वनि निकाल्दै यिनलाई स्तुति गर्न योग्य असल गाई र अश्व प्राप्त भए भनेका थिए।

[सूक्त – ५]

ऋषि – ब्रह्मातिथि काण्व। देवता – अश्विनीकुमार। छन्द – गायत्री बृहती अनुष्टुप्। ]

दूरादिहेव यत्सत्यरुणप्सुरशिश्वितत्। वि भानुं विश्वधातनत् ॥१॥

अति टाढा भए पनि नजिकैजस्तो देखिने रातो आभायुक्त उषाले आफ्ना स्वर्णिम रश्मि फैलाउँदा त्यस प्रकाशले सारा विश्व नै प्रकाशित हुन्छ।

नृवद्दस्रा मनोयुजा रथेन पृथुपाजसा। सचेथे अश्विनोषसम् ॥२॥

हे शत्रुनाशक, नेतृत्व गर्ने अश्विनीकुमार हो ! इच्छा गर्नेबित्तिकै अति विशाल ऐश्वर्यवान् रथमा उषाका नजिक पुग्दछौ।

युवाभ्यां वाजिनीवसू प्रति स्तोमा अदृक्षत। वाचं दूतो यथोहिषे ॥३॥

हे धनप्रदाता अश्विनीकुमार हो ! तिमीहरूका निम्ति स्तुति गाउँछौं। हामी आफ्ना दूतजस्तै वाणीले तिमीहरूको बयान गर्दछौं।

पुरुप्रिया ण ऊतये पुरुमन्द्रा पुरूवसू। स्तुषे कण्वासो अश्विना ॥४॥

हे अश्विनीकुमार हो ! सबैलाई प्रिय लाग्ने, आनन्दित गराउने र प्रचुर ऐश्वर्य प्रदान गर्छौं। हामी कण्व वंशीय आफ्नो रक्षाका लागि तिमीहरूलाई स्तुति गर्दछौं।

महिष्ठा वाजसातमेषयन्ता शुभस्पती। गन्तारा दाशुषो गृहम् ॥५॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै पूजनीय, बल प्रदान गर्ने, श्रेष्ठ कर्म गर्ने र अन्न उत्पादन गर्ने हौ। यज्ञ आदि श्रेष्ठ कर्म गर्ने दानीका घरमा गएर कल्याण गर्दछौं।

ता सुदेवाय दाशुषे सुमेधामवितारिणीम्। घृतैर्गव्यूतिमुक्षतम् ॥६॥

श्रेष्ठ देवताका लागि हवि प्रदान गर्नेलाई नाश नहुने खालको बुद्धि दिंदै घिउले सेचन गर्नका लागि गाईलाई पोषण गर।

आ नः स्तोममुप द्रवत्तूयं श्येनेभिराशुभिः। यातमश्वेभिरश्विना ॥७॥

हे अश्विनीकुमार हो ! श्येन पक्षीझैं द्रुतगामी अश्वद्वारा तिमीहरू शीघ्र यज्ञमा आओ।

येभिस्तिस्रः परावतो दिवो विश्वानि रोचना। त्रीँरक्तून्परिदीयथः ॥८॥

हे अश्विनीकुमार हो ! तीन दिन र तीन रातसम्म दिव्यलोकमा भ्रमण गर्ने यानमा तिमीहरू हाम्रा यस यज्ञमा आओ।

उत नो गोमतीरिष उत सातीरहर्विदा। वि पथः सातये सितम् ॥९॥

हे अश्विनीकुमार हो ! हामीलाई गाईले सम्पन्न प्रचुर अन्न र वितरण गर्न योग्य धन प्रदान गर। त्यसका साथै त्यस धनको सदुपयोग कसरी गर्ने भन्ने कुरो निर्देश गर।

आ नो गोमन्तमश्विना सुवीरं सुरथंरयिम्। वोढहमश्वावतीरिषः ॥१०॥

हे अश्विनीकुमार हो ! हामीलाई गाई, अश्व, श्रेष्ठ रथ र साहसी पुत्रयुक्त महान् ऐश्वर्य प्रदान गर।

वावृधाना शुभस्पती दस्रा हिरण्यवर्तनी। पिबतं सोम्यं मधु ॥११॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै असल काम गर्छौं र शत्रु नाश गर्दछौं। आफ्ना सुनौला रथमा यज्ञस्थलतिर आएर मह मिसाएको सोमरस पान गर।

अस्मभ्यं वाजिनीवसू मघवद्भ्यश्च सप्रथः। छर्दिर्यन्तमदाभ्यम् ॥१२॥

हे ऐश्वर्यवान् अश्विनीकुमार हो ! धनले सम्पन्न हामीलाई सुरक्षित विशाल आवास देओ।

नि षु ब्रह्म जनानां याविष्टं तूयमा गतम्। मोष्व१न्याँ उपारतम् ॥१३॥

हे ज्ञानवृद्धि सुरक्षित राख्ने अश्विनीकुमार हो ! अरू कतै नगई हामीकहाँ आओ।

अस्य पिबतमश्विना युवं मदस्य चारुणः। मध्वो रातस्य धिष्ण्या ॥१४॥

हे अश्विनीकुमार हो ! हामीले समर्पण गरेको मधुर र आनन्ददायक सोमरस पान गर।

अस्मे आ वहतं रयिं शतवन्तं सहस्रिणम्। पुरुक्षुं विश्वधायसम् ॥१५॥

हे अश्विनीकुमार हो ! सबैलाई पालन गर्दै सबैको जीवन धारण गर्दछौं। हामीलाई सयौं वा हजारौं किसिमको वैभव प्रदान गर।

पुरुत्रा चिद्धि वां नरा विह्वयन्ते मनीषिणः। वाघद्भिरश्विना गतम् ॥१६॥

हे अश्विनीकुमार हो ! तिमीहरूलाई अनेकौं मनीषीले आफ्ना स्थानमा निश्चित रूपले बोलाउँछन्। त्यसैले आआफ्ना वाहनमा यज्ञस्थलमा आओ।

जनासो वृक्तबर्हिषो हविष्मन्तो अरङ्कृतः। युवां हवन्ते अश्विना ॥१७॥

हे अश्विनीकुमार हो ! याजकहरू कुशका आसन सजाउँदै ओछ्याएर तिमीहरू दुवैलाई आह्वान गर्दछन्।

अस्माकमद्य वामयं स्तोमो वाहिष्ठो अन्तमः। युवाभ्यां भूत्वश्विना ॥१८॥

हे अश्विनीकुमार हो ! हामी स्तोताले उच्चारण गरेको स्तोत्र तिमीहरूका नजिक पुगोस्।

यो ह वां मधुनो दृतिराहितो रथचर्षणे। ततः पिबतमश्विना ॥१९॥

हे अश्विनीकुमार हो ! तिमीहरूका रथका दर्शनीय भागमा यजमानले स्थापित गरेका मधुपात्रमा मधुर रस ग्रहण गरे र पान गर।

तेन नो वाजिनीवसू पश्वे तोकाय शं गवे। वहतं पीवरीरिषः ॥२०॥

हे अन्न र धनले सम्पन्न अश्विनीकुमार हो ! तिमीहरू हाम्रा सन्तान र गाई आदि पशुका निमित्त प्रचुर अन्न लिएर आफ्ना रथमा यहाँ आओ।

उत नो दिव्या इष उत सिन्धूँरहर्विदा। अप द्वारेव वर्षथः ॥२१॥
नित्य प्रातःकाल दर्शनीय र स्तुत्य हे अश्विनीकुमार हो ! कृपापूर्वक समयअनुसार जल वर्साइराख। त्यसबाट हामीलाई प्रचुर अन्न प्राप्त होस्।

कदा वां तौग्र्यो विधत्समुद्रे जहितो नरा। यद्वां रथो विभिष्पतात् ॥२२॥
हे अश्विनीकुमार हो ! समुद्रमा फ्याँकिएका तुग्रका पुत्र भुज्युले तिमीहरूको प्रार्थना कहिले गरे ? र तिमीहरूले त्यहाँबाट रथमा उठाएर उनलाई बचाएका थियौ।

युवं कण्वाय नासत्यापिरिप्ताय हर्म्ये। शश्वदूतीर्दशस्यथः ॥२३॥
सत्यको पालना गर्ने हे अश्विनीकुमार हो ! पीडित कण्व ऋषिलाई तिमीहरूले उच्च आवास दिएर सुरक्षा प्रदान गरेका थियौ।

ताभिरा यातमूतिभिर्नव्यसीभिः सुशस्तिभिः। यद्वां वृषण्वसू हुवे ॥२४॥
हे धन बर्साउने अश्विनीकुमार हो ! हामीले आह्वान गर्दा तिमीहरू आफ्ना रक्षण साधनले युक्त भएर यहाँ आओ।

यथा चित्कण्वमावतं प्रियमेधमुपस्तुतम्। अत्रिं शिञ्जारमश्विना ॥२५॥
हे अश्विनीकुमार हो ! प्रार्थना गर्ने अत्रि, प्रियमेध, कण्व र उपस्तुतको सुरक्षा गरेझैं हामीलाई पनि सुरक्षा प्रदान गर।

यथोत कृत्व्ये धनेऽशुं गोष्वगस्त्यम्। यथा वाजेषु सोभरिम् ॥२६॥
हे अश्विनीकुमार हो ! ऐश्वर्य पाउन खोज्ने अंशुको रक्षा गरेझैं, गाई प्राप्त गर्न खोज्ने अगस्त्यको रक्षा गरेझैं र सोभरीलाई युद्धमा सुरक्षा प्रदान गरेझैं हामीलाई सुरक्षा गर।

एतावद्वां वृषण्वसू अतो वा भूयो अश्विना। गृणन्तः सुम्नमीमहे ॥२७॥
हे ऐश्वर्य बर्साउने अश्विनीकुमार हो ! हामी स्तुति गर्दै तिमीहरूसित प्रचुर धन माग्दछौं।

रथं हिरण्यवन्धुरं हिरण्याभीशुमश्विना। आ हि स्थाथो दिविस्पृशम् ॥२८॥
हे अश्विनीकुमार हो ! सुनको दण्ड र सुनकै लगाम भएको दिव्यलोक स्पर्श गर्ने रथमा आरूढ भएर तिमीहरू दुवै आओ।

हिरण्ययी वां रभिरीषा अक्षो हिरण्ययः। उभा चक्रा हिरण्यया ॥२९॥
हे अश्विनीकुमार हो ! तिमीहरूका रथको काठ सुनौलो आभाले युक्त छ। धुरो र पाङ्ग्रा पनि सुनले बनेका छन्।

तेन नो वाजिनीवसू परावतश्चिदा गतम्। उपेमां सुष्टुतिं मम ॥३०॥
हे बल तथा धनले सम्पन्न अश्विनीकुमार हो ! तिमीहरू दुवै दूरदेशबाट पनि हाम्रो प्रार्थना सुन्नका लागि आआफ्ना रथमा हामीकहाँ आओ।

आ वहेथे पराकात्पूर्वीरश्नन्तावश्विना। इषो दासीरमर्त्या ॥३१॥
हे अश्विनीकुमार हो ! दुष्टका अनेकौं पुरी विनाश गर्दै अन्न लिएर यज्ञमा आओ।

आ नो द्युम्नैरा श्रवोभिरा राया यातमश्विना। पुरुश्चन्द्रा नासत्या ॥३२॥
हे सत्यनिष्ठ र अनेकौंका मित्र अश्विनीकुमार हो ! धन, अन्न र दैवी सम्पत्तिले सम्पन्न भएर हामीकहाँ आओ।

एह वां प्रुषितप्सवो वयो वहन्तु पर्णिनः। अच्छा स्वध्वरं जनम् ॥३३॥
हे अश्विनीकुमार हो ! चराको जस्तै तेज गति भएका घोडाले तिमीहरूलाई श्रेष्ठ यज्ञ आदि कर्म गर्ने याजकका नजिकै ल्याऊन्।

रथं वामनुगायसं य इषा वर्तते सह। न चक्रमभि बाधते ॥३४॥
स्तोताले पछ्याएका तिमीहरूका अश्व वा अन्नयुक्त रथका चक्रलाई बाधा पुग्दैन।

हिरण्ययेन रथेन द्रवत्पाणिभिरश्वैः। धीजवना नासत्या ॥३५॥
हे सद्‌बुद्धिजस्तै सत्य प्रकट गर्ने देवता हो ! सुनौलो रथ र दौडने अश्वमा यहाँ आओ।

युवं मृगं जागृवांसं स्वदथो वा वृषण्वसू। ता नः पृङ्क्तमिषा रयिम् ॥३६॥
हे वर्षणशील सम्पत्ति भएका देवताहरू हो ! जागृत र शोधित सोमरस पान गर्ने तिमीहरू दुवैले हामीलाई पोषक अन्नले सम्पन्न बनाओ।

**ता मे अश्विना सनीनां विद्यात नवानाम्।**
**यथा चिच्चैद्यः कशुः शतमुष्ट्रानां ददत्सहस्रा दश गोनाम् ॥३७॥**

अश्विनीकुमारले हाम्रा लागि उपयोगी ऐश्वर्य विभूति चिनून्। चेदी वंशका कशुले सयौं उँट, दासी र हजारौं गाई हामीलाई प्रदान गरेको कुरो पनि जानून्।

**यो मे हिरण्यसन्दृशो दश राज्ञो अमंहत।**
**अधस्पदा इच्चैद्यस्य कृष्टयश्चर्मम्ना अभितो जनाः ॥३८॥**

हामीलाई दस राजाका सुनौलो पुरुषार्थ प्रदान गर्ने चेदी वंशीयका चरणमा सारा प्रजा झुकेर रहन्छन्।

**माकिरेना पथा गाद्येनेमे यन्ति चेदयः।**
**अन्यो नेत्सूरिरोहते भूरिदावत्तरो जनः ॥३९॥**

चेदी वंशीयहरू जाने मार्गबाट अरू जाँदैनन्। याजकलाई कशुले भन्दा बढी धन कसैले प्रदान गर्दैन।

**[सूक्त – ६]**

**ऋषि** – वत्स काण्व। **देवता** – इन्द्र तिरिन्दिर पार्शव्य। **छन्द** – गायत्री।

**महाँ इन्द्रो य ओजसा पर्जन्यो वृष्टिमाँ इव। स्तोमैर्वत्सस्य वावृधे ॥१॥**

जल वर्षा गराउने मेघजस्तै महान् र तेजस्वी इन्द्रदेव आफ्ना प्रियपात्रको स्तुतिले समृद्ध भएर व्यापक रूप ग्रहण गर्दछन्।

**प्रजामृतस्य पिप्रतः प्र यद्भरन्त वह्नयः। विप्रा ऋतस्य वाहसा ॥२॥**

आकाश मार्गबाट गमन गर्न सक्षम अश्वले यज्ञका लागि तत्पर इन्द्रदेवलाई वेगपूर्वक ल्याउँदा उद्गाताहरू यज्ञमा प्रयुक्त हुने मन्त्रले उनै इन्द्रदेवको स्तुति गर्दछन्।

**कण्वा इन्द्रं यदक्रत स्तोमैर्यज्ञस्य साधनम्। जामि ब्रुवत आयुधम् ॥३॥**

कण्ववंशीय ऋषिहरूले स्तुतिका माध्यमबाट इन्द्रदेवलाई यज्ञका साधक बनाउँदा शस्त्रको आवश्यकता नै पर्दैन भन्ने गरिन्छ।

**समस्य मन्यवे विशो विश्वा नमन्त कृष्टयः। समुद्रायेव सिन्धवः ॥४॥**

नदीहरू समुद्रमा मिसिनका लागि वेगले गएझैं सबै प्रजा उग्र इन्द्रदेवप्रति नमस्कार गर्दै आकर्षित हुन्छन्।

**ओजस्तदस्य तित्विष उभे यत्समवर्तयत्। इन्द्रश्चर्मेव रोदसी ॥५॥**

द्युलोकदेखि पृथ्वीलोकसम्म आवरणजस्तै भएर फिँजिँदै सुरक्षा गर्ने इन्द्रदेवको ओज अत्यन्त तेजस्वी छ।

**वि चिद्वृत्रस्य दोधतो वज्रेण शतपर्वणा। शिरो बिभेद वृष्णिना ॥६॥**

संसारलाई भयभीत गर्ने वृत्रासुरको टाउको शक्तिसम्पन्न इन्द्रदेवले आफ्नो तीक्ष्ण प्रहार भएका वज्रले छिनाए।

**इमा अभि प्र णोनुमो विपामग्रेषु धीतयः। अग्नेः शोचिर्न दिद्युतः ॥७॥**

अग्निको ज्वालाझैं तेजयुक्त स्तोत्र हामी स्तोता उनीसामु बारम्बार उच्चारण गर्दछौं।

**गुहा सतीरुप त्मना प्र यच्छोचन्त धीतयः। कण्वा ऋतस्य धारया ॥८॥**

गुफामा रहेका गाई इन्द्रदेव नजिकै पुगेपछि निश्चिन्त हुन्छन्। कण्व वंशका ऋषिहरू उनलाई सोमरसले सेचन गर्दछन्।

**प्र तमिन्द्र नशीमहि रयिं गोमन्तमश्विनम्। प्र ब्रह्म पूर्वचित्तये ॥९॥**

हे इन्द्रदेव! हामी गाई र अश्वले युक्त धन प्राप्त गरौं। सबैभन्दा पहिले हामी आफ्ना ज्ञानका बलमा अन्न प्राप्त गरौं।

**अहमिद्धि पितुष्परि मेधामृतस्य जग्रभ। अहं सूर्य इवाजनि ॥१०॥**

हामीले पालनकर्ता यज्ञरूपी इन्द्रदेवको बुद्धि आफूतिर आकर्षित गरेका छौं। यसबाट हामी सूर्यजस्तै तेजले युक्त भएका छौं।

अहं प्रत्नेन मन्मना गिरः शुम्भामि कण्ववत्। येनेन्द्रः शुष्ममिद्दधे ॥११॥
कण्व ऋषिजस्तै हामीले इन्द्रदेवलाई पुराना स्तोत्रले सुशोभित गरेका छौं, तिनका प्रभावले उनी शक्तिसम्पन्न हुन्छन्।

ये त्वामिन्द्र न तुष्टुवुर्ऋषयो ये च तुष्टुवुः। ममेद्वर्धस्व सुष्टुतः ॥१२॥
हे इन्द्रदेव ! तिम्रो स्तुति नगर्ने र तिम्रा निम्ति स्तुति गर्ने ऋषिहरूमध्ये मेरो स्तोत्र प्रशंसनीय छ। तिमी त्यस स्तोत्रका प्रभावले उचित किसिमले परिपुष्ट होऊ।

यदस्य मन्युरध्वनीद्वि वृत्रं पर्वशो रुजन्। अपः समुद्रमैरयत् ॥१३॥
इन्द्रदेवको क्रोधले टुक्रा भएको वृत्र गर्जेका बेला इन्द्रदेवले समुद्रतिर पानी बगाए।

नि शुष्ण इन्द्र धर्णसिं वज्रं जघन्थ दस्यवि। वृषा ह्युग्र शृण्विषे ॥१४॥
हे इन्द्रदेव ! तिमीले आफ्ना वज्रले शुष्ण नामका राक्षसमाथि प्रहार गर्‍यौ र त्यसको वध गरेपछि यशस्वी बन्यौ।

न द्याव इन्द्रमोजसा नान्तरिक्षाणि वज्रिणम्। न विव्यचन्त भूमयः ॥१५॥
इन्द्रदेवलाई द्युलोक, अन्तरिक्ष र पृथ्वीका शक्तिले पनि छेकन सक्दैनन्।

यस्त इन्द्र महीरपः स्तभूयमान आशयत्। नि तं पद्यासु शिश्नथः ॥१६॥
हे इन्द्रदेव ! बृहत् जलप्रवाह रोकेर बसेका वृत्रासुरलाई तिमीले पानीभित्रै मारिदियौ।

य इमे रोदसी मही समीची समजग्रभीत्। तमोभिरिन्द्र तं गुहः ॥१७॥
वृत्रासुरले महान् द्युलोक र पृथ्वी छेकेदिएपछि सर्वत्र अन्धकार भरियो।

य इन्द्र यतयस्त्वा भृगवो ये च तुष्टुवुः। ममेदुग्र श्रुधी हवम् ॥१८॥
हे शूरवीर इन्द्रदेव ! तिम्रो प्रार्थना सबै यति र भृगुले गरे। हाम्रो प्रार्थना पनि सुन।

इमास्त इन्द्र पृश्नयो घृतं दुहत आशिरम्। एनामृतस्य पिप्युषीः ॥१९॥
हे इन्द्रदेव ! तिम्रा यज्ञ प्रक्रिया अगाडि बढाउँदै पोषित गर्ने पृश्निहरूले यो आशिर र घिउ प्रदान गर्दछन्।

या इन्द्र प्रस्वस्त्वासा गर्भमचक्रिरन्। परि धर्मेव सूर्यम् ॥२०॥
हे इन्द्रदेव ! सूर्यका वरिपरि रहेका किरणहरू प्रसवशीलजस्तै भएर आफ्ना मुखले तिमीबाट गर्भधारण गर्दै घुम्दछन्।

त्वामिच्छवसस्पते कण्वा उक्थेन वावृधुः। त्वां सुतास इन्दवः ॥२१॥
हे बलका स्वामी इन्द्रदेव ! कण्व वंशीय ऋषिका स्तोत्रले तिमीलाई समृद्ध पार्दछन्। उनीहरू सोमरस समर्पित गरेर तिमीलाई हर्षित गराउँछन्।

तवेदिन्द्र प्रणीतिषूत प्रशस्तिरद्रिवः। यज्ञो वितन्तसाय्यः ॥२२॥
पर्वतका किल्लामा निवास गर्ने हे इन्द्रदेव ! तिम्रा कृपाले सम्पन्न हुने यज्ञमा तिम्रै स्तुति गरिन्छ।

आ न इन्द्र महीमिषं पुरं न दर्षि गोमतीम्। उत प्रजां सुवीर्यम् ॥२३॥
हे इन्द्रदेव ! हामीलाई गाईले सम्पन्न विशाल नगर, अन्न, श्रेष्ठ बल र उत्तम सन्तान प्रदान गर।

उत त्यदाश्वश्व्यं यदिन्द्र नाहुषीष्वा। अग्रे विक्षु प्रदीदयत् ॥२४॥
हे इन्द्रदेव ! नहुष राजालाई प्रदान गरेझैं अनेकौं द्रुतगामी अश्व हामीलाई प्रदान गर।

अभि व्रजं न तत्निषे सूर उपाकचक्षसम्। यदिन्द्र मृळयासि नः ॥२५॥
हे ज्ञानसम्पन्न इन्द्रदेव ! हाम्रो गोठ गाईले समृद्ध गराएर हामीलाई हर्ष प्रदान गर।

यदङ्ग तविषीयस इन्द्र प्रराजसि क्षितीः। महाँ अपार ओजसा ॥२६॥
हे आत्मस्वरूप इन्द्रदेव ! तिमी आफ्नो महान् ओज र शौर्य प्रदर्शित गरेर प्रजामाथि शासन गर्दछौ।

तं त्वा हविष्मतीर्विश उप ब्रुवत ऊतये। उरुज्रयसमिन्दुभिः ॥२७॥
हे इन्द्रदेव ! आहुति प्रदान गर्ने मानिसहरू आफ्नो सुरक्षाका लागि तिमीलाई नै सोमपान गर्न बोलाउँछन्।

उपह्वरे गिरीणां सङ्गथे च नदीनाम्। धिया विप्रो अजायत ॥२८॥
पर्वतका गुफा, घाटी र नदीका सङ्गममा विप्रहरू उत्पन्न हुन्छन्।

अतः समुद्रमुद्वतश्चिकित्वाँ अव पश्यति। यतो विपान एजति ॥२९॥
व्यापक जीवनतत्त्व गतिशील हुने माथिल्ला स्थानबाट प्रखर दृष्टि भएका इन्द्रले समुद्र, जल वा जीवनप्रवाह हेर्दछन्।

आदित्प्रत्नस्य रेतसो ज्योतिष्पश्यन्ति वासरम्। परो यदिध्यते दिवा ॥३०॥
द्युलोकभन्दा पर स्वयं प्रकाशित सविता र दिउँसो देखिने सूर्यले सबै प्राचीनतम तेजस्वी स्वरूपमा इन्द्रदेवकै तेज देखेका छन्।

कण्वास इन्द्र ते मतिं विश्वे वर्धन्ति पौंस्यम्। उतो शविष्ठ वृष्ण्यम् ॥३१॥
हे इन्द्रदेव ! कण्व वंशी ऋषिले तिम्रो मेधा र ओज बढाउँदै तिम्रो शौर्य समृद्ध पार्दछन्।

इमां म इन्द्र सुष्टुतिं जुषस्व प्र सु मामव। उत प्र वर्धया मतिम् ॥३२॥
हे इन्द्रदेव ! हाम्रो प्रार्थना स्वीकार गर्दै हामीलाई उचित किसिमले सुरक्षा गर अनि हाम्रो मेधा बढाइदेऊ।

उत ब्रह्मण्या वयं तुभ्यं प्रवृद्ध वज्रिवः। विप्रा अतक्ष्म जीवसे ॥३३॥
हे इन्द्रदेव ! तिमी विशाल वज्र धारण गर्दछौ। आफ्नो दीर्घायुका निम्ति हामी स्तोताहरू तिम्रो प्रार्थना गर्दछौं।

अभि कण्वा अनूषतापो न प्रवता यतीः। इन्द्रं वनन्वती मतिः ॥३४॥
बगेको पानी सधैं ओरालो लागेझैं कण्व वंशी ऋषिले गरेको स्तुति इन्द्रकहाँ पुग्दछ।

इन्द्रमुक्थानि वावृधुः समुद्रमिव सिन्धवः। अनुत्तमन्युमजरम् ॥३५॥
नदीका पानीले समुद्र समृद्ध भएझैं स्तुतिले उत्साही र अविनाशी इन्द्र समृद्ध हुन्छन्।

आ नो याहि परावतो हरिभ्यां हर्यताभ्याम्। इममिन्द्र सुतं पिब ॥३६॥
हे इन्द्रदेव ! बलवान् अश्वमा सुदूर स्थानबाट आएर पेलेर तयार गरेको सोमपान गर।

त्वामिद्वृत्रहन्तम जनासो वृक्तबर्हिषः। हवन्ते वाजसातये ॥३७॥
वृत्रासुर विनाश गर्ने हे इन्द्रदेव ! अन्न र ऐश्वर्य प्राप्त गर्नका लागि हामी याजकहरू तिमीलाई आह्वान गर्दछौं।

अनु त्वा रोदसी उभे चक्रं न वर्त्येशम्। अनु सुवानास इन्दवः ॥३८॥
हे इन्द्रदेव ! रथका पाङ्ग्रा घोडाका पछि लागेझैं द्युलोक, पृथ्वीलोक र सोम तिम्रा पछि लाग्दछन्।

मन्दस्वा सु स्वर्णर उतेन्द्र शर्यणावति। मत्स्वा विवस्वतो मती ॥३९॥
हे इन्द्रदेव ! शर्यणावत् प्रदेशमा सम्पन्न यज्ञमा याजकले गरेका प्रार्थनाले प्रसन्न होऊ।

वावृधान उप द्यवि वृषा वज्र्यरोरवीत्। वृत्रहा सोमपातमः ॥४०॥
सर्वश्रेष्ठ, शक्तिसम्पन्न, वज्रधारी, वृत्रहन्ता र अति सोमपान गर्ने इन्द्रदेव दिव्यलोक नजिकबाट गर्जन गर्दछन्।

ऋषिर्हि पूर्वजा अस्येक ईशान ओजसा। इन्द्र चोष्कूयसे वसु ॥४१॥
हे इन्द्रदेव ! तिमी सबैभन्दा पहिले उत्पन्न भएका ऋषि हौ र आफ्नै शक्तिले सबैलाई सञ्चालित गर्दछौ। हामीलाई प्रचुर धन प्रदान गर।

अस्माकं त्वा सुताँ उप वीतपृष्ठा अभि प्रयः। शतं वहन्तु हरयः ॥४२॥
हे इन्द्रदेव ! हामीले पेलेर तयार पारेको सोमरस पान गर्नका लागि तिमीलाई बलियो र गतिलो पिठ्युँ भएका, सयौं अश्वले यज्ञस्थलमा लिएर आऊन्।

इमां सु पूर्व्यां धियं मधोर्घृतस्य पिप्युषीम्। कण्वा उक्थेन वावृधुः ॥४३॥
कण्व वंशीय पूर्वजहरू मन्त्रद्वारा यज्ञ गरेर मधुर जलको वर्षा गराउँछन्।

इन्द्रमिद्विमहीनां मेधे वृणीत मर्त्यः। इन्द्रं सनिष्युरूतये ॥४४॥
आफ्नो र यज्ञको सुरक्षा लागि सबै मानिस देवताहरूमध्ये महान् इन्द्रदेवलाई रोज्दछन्।

अर्वाञ्चं त्वा पुरुष्टुत प्रियमेधस्तुता हरी। सोमपेयाय वक्षतः ॥४५॥
प्रियमेध र अनेकौंले प्रशंसा गरेका अश्वले तिमीलाई सोमपानका लागि ल्याओस्।

शतमहं तिरिन्दिरे सहस्रं पर्शावा ददे। राधांसि याद्वानाम् ॥४६॥
यदुवंशीहरूमा सर्वश्रेष्ठ हामीले परशुपुत्र तिरिन्दिरबाट हजारौँको सङ्ख्यामा विभिन्न किसिमका धनवैभव ग्रहण गर्‍यौँ।

त्रीणि शतान्यर्वतां सहस्रा दश गोनाम्। ददुष्पज्राय साम्ने ॥४७॥
यज्ञमा तिरिन्दिरले पज्रलाई तीन सय अर्वा जातका अश्व र दस हजार गाई प्रदान गरे।

उदानट् ककुहो दिवमुष्ट्राञ्चतुर्युजो ददत्। श्रवसा याद्वं जनम् ॥४८॥
तिरिन्दिर राजाले चार वटा सुनका थैलासहित ऊँट दान गरेर आफ्ना यज्ञका पुण्यले उन्नति गरेर दिव्यलोक प्राप्त गरे।

[सूक्त - ७]

**ऋषि** - पुनर्वत्स काण्व। **देवता** - मरुद्गण। **छन्द** - गायत्री।

प्र यद्वस्त्रिष्टुभमिषं मरुतो विप्रो अक्षरत्। वि पर्वतेषु राजथ ॥१॥
हे मरुत्हरू हो! विद्वान् याजकले तीनै सवनमा स्तुति गरेर अन्न समर्पित गर्दा तिमी पर्वत शृङ्खलामा सुशोभित हुन्छौ।

यदङ्ग तविषीयवो यामं शुभ्रा अचिध्वम्। नि पर्वता अहासत ॥२॥
सौन्दर्ययुक्त, प्रिय र बलवान् हे मरुत्गण! आफ्नो रथ सजाएर तिमीहरूले यात्रा गर्दा पर्वत पनि प्रकम्पित हुन थाल्दछन्।

उदीरयन्त वायुभिर्वाश्रासः पृश्निमातरः। धुक्षन्तपिप्युषीमिषम् ॥३॥
शब्द गर्ने र पृथ्वीलाई मातासमान मान्ने मरुत्हरू आफ्ना वायुका झङ्कारले बादल विदीर्ण गरेर जल बर्साउँछन्। उनीहरू सबै प्राणीलाई पोषक अन्न प्रदान गर्दछन्।

वपन्ति मरुतो मिहं प्र वेपयन्ति पर्वतान्। यद्यामं यान्ति वायुभिः ॥४॥
वीर मरुत्हरू वायुका प्रवाहसित चल्दा वर्षाले पर्वतलाई कम्पायमान गराउँछन्।

नि यद्यामाय वो गिरिर्नि सिन्धवो विधर्मणे। महे शुष्माय येमिरे ॥५॥
हे मरुत्हरू हो! तिमीहरूको वेग र महान् बलले पर्वत डराउँछन् र नदी पनि भयभीत भएर मन्द गतिले बग्न थाल्दछन्।

युष्माँ उ नक्तमूतये युष्मान्दिवा हवामहे। युष्मान्प्रयत्यध्वरे ॥६॥
हे मरुत्हरू हो! आफ्नो सुरक्षाका लागि तिमीहरूलाई हामी राति, दिउँसो र यज्ञ गरेका बेला सुरुमै बोलाउँछौँ।

उदु त्ये अरुणप्सवश्चित्रा यामेभिरीरते। वाश्रा अधि ष्णुना दिवः ॥७॥
रातो रङ्गका र अद्‌भुत गर्जन गर्ने मरुत्हरू रथमा बसेर दिव्यलोकबाट आउँछन्।

सृजन्ति रश्मिमोजसा पन्थां सूर्याय यातवे। ते भानुभिर्वि तस्थिरे ॥८॥
मरुत्हरू सूर्यदेवको किरण अगाडि बढ्नका लागि मार्ग प्रशस्त गरिदिन्छन् र तेजस्वी किरण सर्वत्र फिँजाउँछन्।

इमां मे मरुतो गिरमिमं स्तोममृभुक्षणः। इमं मे वनता हवम् ॥९॥
शस्त्रास्त्रले सुसज्जित हे वीर मरुत्हरू हो! हामीले उच्चारण गरेको स्तोत्र र स्तुति तिमीहरू ग्रहण गर।

त्रीणि सरांसि पृश्नयो दुदुह्रे वज्रिणे मधु। उत्सं कवन्धमुद्रिणम् ॥१०॥
पृश्निहरूले इन्द्रदेवलाई तीनै सवनमा पिउन योग्य, दुध र जल मिसाएको महजस्तो सोमरस तीन वटा ठूला पात्रमा भरेर तयार गरेका छन्।

मरुतो यद्ध वो दिवः सुम्नायन्तो हवामहे। आ तू न उप गन्तन ॥११॥
हे वीर मरुत्हरू! सुखको कामना गर्ने हामी याजकहरूले आह्वान गर्दा दिव्यलोकबाट चाँडै अवतरित होओ।

यूयं हि ष्ठा सुदानवो रुद्रा ऋभुक्षणो दमे। उत प्रचेतसो मदे ॥१२॥
श्रेष्ठ दानशील, शत्रु रुवाउने र शस्त्रास्त्र धारण गर्ने हे तेजस्वी मरुत् हो! यज्ञमण्डपमा बसेर हर्ष प्रदान गर्ने सोमरस पिउँदा तिमीहरूको मेधा निश्चित पनि चेतनासम्पन्न हुन्छ।

**आ नो रयिं मदच्युतं पुरुक्षुं विश्वधायसम्। इयर्ता मरुतो दिवः ॥१३॥**
हे मरुत्‌हरू हो ! शत्रुको मद चुर गराउँदै पोषक सम्पत्ति प्रचुर मात्रामा दिव्यलोकबाट हाम्रा लागि ल्याइदेओ।

**अधीव यद् गिरीणां यामं शुभ्रा अचिध्वम्। सुवानैर्मन्दध्व इन्दुभिः ॥१४॥**
हे तेजस्वी मरुत्‌हरू हो ! पहाडमा चढ्नका लागि रथ सजाउँदै पेलेर तयार गरेको सोमरस पिउँदा तिमीहरू आनन्दित हुन्छौ।

**एतावतश्चिदेषां सुम्नं भिक्षेत मर्त्यः। अदाभ्यस्य मन्मभिः ॥१५॥**
स्तवन गर्ने यजमानका स्तोत्रले शक्तिसम्पन्न मरुत्‌हरूसित श्रेष्ठ सुखको माग गर्दछन्।

**ये द्रप्सायव रोदसी धमन्त्यनु वृष्टिभिः। उत्सं दहन्तो अक्षितम् ॥१६॥**
मरुत्‌हरू निरन्तर स्रोतको दोहन गर्दछन्। समस्त भूभाग र अन्तरिक्ष वर्षाका जलका थोपाले भिजाउँछन्।

**उदु स्वानेभिरीरत उद्रथैरुदु वायुभिः। उत्स्तोमैः पृश्निमातरः ॥१७॥**
मरुत्‌हरू ध्वनि गर्दै आफ्नो रथ, मन्त्रशक्ति र वायुले ऊर्ध्वगतिमा पुग्दछन्। उनीहरूकी माता पृश्नी हुन्।

**येनाव तुर्वशं यदुं येन कण्वं धनस्पृतम्। राये सु तस्य धीमहि ॥१८॥**
हे वीर मरुत्‌हरू हो ! जुन शक्तिका माध्यमले तिमीहरूले यदु नरेश तुर्वशलाई सुरक्षित गरायौ र ऐश्वर्यको कामना गर्ने कण्वलाई सुरक्षित गरायौ, ऐश्वर्य प्राप्त गर्नका लागि हामी त्यही बल पाऊँ भनेर तिमीहरूसित प्रार्थना गर्दछौं।

**इमा उ वः सुदानवो घृतं न पिप्युषीरिषः। वर्धान्काण्वस्य मन्मभिः ॥१९॥**
हे श्रेष्ठ मरुत्‌हरू हो ! घिउजस्तै पौष्टिक अन्न र कण्वपुत्रका मननीय स्तोत्रले तिमीहरू समृद्ध होओ।

**क्व नूनं सुदानवो मदथा वृक्तबर्हिषः। ब्रह्मा को वः सपर्यति ॥२०॥**
कुशको आसनमा बस्ने हे श्रेष्ठ दानी मरुत्‌हरू हो ! तिमीहरू कहाँ खुसी हुन्थ्यौ ? तिमीहरूको प्रशंसा गर्ने को होला ?

**नहि ष्म यद्ध वः पुरा स्तोमेभिर्वृक्तबर्हिषः। शर्धाँ ऋतस्य जिन्वथ ॥२१॥**
हे मरुत्‌हरू हो ! उहिले नै स्तोताले गाएका स्तोत्रगानले तिमीहरूको यज्ञसम्बन्धी बल वृद्धि गराउन सम्भव छैन। हामीले गरेका स्तुतिगानले तिमीहरू समृद्ध होओ।

**समु त्ये महतीरपः सं क्षोणी समु सूर्यम्। सं वज्रं पर्वशो दधुः ॥२२॥**
मरुत्‌हरूले वर्षारूपी जल औषधिमा स्थापित गरे। दिव्यलोक, पृथ्वी र सूर्यलोकलाई उचित स्थानमा स्थापित गरे। वृत्रको जरै मास्नका लागि कठोर वज्र धारण गरे।

**वि वृत्रं पर्वशो ययुर्वि पर्वताँ अराजिनः। चक्राणा वृष्णि पौंस्यम् ॥२३॥**
शक्तिशाली र पुरुषार्थ बढाउने शासक मरुत्‌हरूले पर्वतजस्तै वृत्रलाई छिन्नभिन्न पारे।

**अनु त्रितस्य युध्यतः शुष्ममावन्नुत क्रतुम्। अन्विन्द्रं वृत्रतूर्ये ॥२४॥**
मरुत्‌हरूले सङ्घर्षरत वीर त्रितका कार्यशक्तिलाई सुरक्षा प्रदान गरे। उनीहरूले वृत्रलाई मार्नमा इन्द्रदेवको सहायता गरे।

**विद्युद्धस्ता अभिद्यवः शिप्राः शीर्षन्हिरण्ययीः। शुभ्रा व्यञ्जत श्रिये ॥२५॥**
सुन्दर वर्णले सुशोभित मरुत्‌हरूले सौन्दर्य बढाउनका लागि आफ्ना शिरमा सुनको मुकुट लगाए। उनीहरू विद्युत्जस्तै तेजस्वी हतियार आफ्ना हातमा धारण गर्दछन्।

**उशना यत्परावत उक्ष्णो रन्ध्रमयातन। द्यौर्न चक्रदद्भिया ॥२६॥**
हे मरुत्‌हरू हो ! तिमीहरू अर्काका कल्याणको कामना गर्दछौ। तिमीहरू यस देशमा बादलसँग आउँदा दिव्यलोकवासीजस्तै मृत्युलोकका प्राणी पनि डरले काँप्दछन्।

**आ नो मखस्य दावनेऽश्वैर्हिरण्यपाणिभिः। देवास उप गन्तन ॥२७॥**
हे मरुत्‌हरू हो ! हामी याज्ञिकहरूलाई दिव्य अनुदान प्रदान गर्नका लागि सुनका आभूषणले युक्त घोडामा यज्ञस्थलमा आओ।

यदेषां पृषती रथे प्रष्टिर्वहति रोहितः । यान्ति शुभ्रा रिणन्नपः ॥२८॥
मरुत्‌हरूको रथ सेता टाटे मृगले तेज गतिमा तान्दछन्। गोरो वर्णका मरुत्‌हरू यज्ञमा पुग्दा जलको वर्षा हुन्छ।

सुषोमे शर्यणावत्यार्जीके पस्त्यावति। ययुर्निचक्रया नरः ॥२९॥
वीर मरुत्‌हरू ऋजिका प्रदेशमा शर्यणावत् सरोवरनजिकै यज्ञगृहमा निवास गर्दछन्। तिनीहरू वेगवान् पाङ्ग्राले युक्त रथमा आसीन भएर गमन गर्दछन्।

कदा गच्छाथ मरुत इत्था विप्रं हवमानम्। मार्डीकेभिर्नाधमानम् ॥३०॥
हे मरुत्‌हरू हो ! विद्वान् याजक ऐश्वर्यको कामनाले तिमीहरूको स्तुति गर्दछन्। उनका नजिक ऐश्वर्यसाधनले युक्त भएर तिमीहरू कहिले पुग्दछौ ?

कद्ध नूनं कधप्रियो यदिन्द्रमजहातन। को वः सखित्व ओहते ॥३१॥
हे स्तुति रुचाउने मरुत् हो ! कुन वेला तिमीहरूले इन्द्रको साथ छोडेका छौ ? तिमीहरूको मित्रता प्राप्त गर्नका लागि कसले याचना गरेको हो ?

सहो षु णो वज्रहस्तैः कण्वासो अग्निं मरुद्भिः। स्तुषे हिरण्यवाशीभिः ॥३२॥
हे कण्ववंशी हो ! सुनौलो बन्चरो प्रयोग गर्ने र हातमा वज्र लिने मरुत्‌हरूसँगै अग्निलाई पनि विधिवत् प्रार्थना गर।

ओ षु वृष्णः प्रयज्यूना नव्यसे सुविताय। ववृत्यां चित्रवाजान् ॥३३॥
अत्यन्त प्रार्थनीय र अद्भुत शक्तिसम्पन्न मरुत्‌हरूलाई नवीन ऐश्वर्य प्राप्तिका लागि हामी आफ्ना नजिकै बोलाउँछौं।

गिरयश्चिन्नि जिहते पर्शानासो मन्यमानाः। पर्वताश्चिन्नि येमिरे ॥३४॥
वीर मरुत्‌हरूको आवागमनले अग्ला चुचुरा भएका पर्वतहरू आफ्नो ठाउँबाट सर्दछन्। विशाल पर्वतजस्तो मेघ पनि आफ्नो सीमाभित्र रहन सक्दैन।

आक्ष्णयावानो वहन्त्यन्तरिक्षेण पततः। धातारः स्तुवते वयः ॥३५॥
आँखा झिम्क्याएजस्तै वेग भएका घोडाले भक्तलाई अन्न प्रदान गर्ने मरुत्‌हरूलाई आकाशमार्गमा हिँडाउँछन्।

अग्निर्हि जानि पूर्व्यश्छन्दो न सूरो अर्चिषा। ते भानुभिर्वि तस्तिरे ॥३६॥
अग्निदेव आफ्ना तेजोबलले सूर्यजस्तै सर्वश्रेष्ठ भएर उदाए। उसरी नै मरुत्‌हरू पनि आआफ्ना तेजोबलले सर्वव्यापी भएर रहन्छन्।

[सूक्त - ८]

ऋषि - सध्वंस काण्व। देवता - अश्विनीकुमार। छन्द - अनुष्टुप्।

आ नो विश्वाभिरूतिभिरश्विना गच्छतं युवम्।
दस्रा हिरण्यवर्तनी पिबतं सोम्यं मधु ॥१॥
हे शत्रुहन्ता अश्विनीकुमार हो ! तिमीहरू आफ्ना रक्षणसाधनका साथ स्वर्णिम रथमा आसीन भएर हाम्रा निकट आओ र मधुर सोमरस पान गर।

आ नूनं यातमश्विना रथेन सूर्यत्वचा।
भुजी हिरण्यपेशसा कवी गम्भीरचेतसा ॥२॥
स्वर्णिम शरीरले सुशोभित हे अश्विनीकुमारहरू हो ! तिमीहरू श्रेष्ठ कर्मशील र महान् क्रान्तदर्शी हौ। तिमीहरू सूर्यजस्तै कान्ति भएका रथमा आरूढ भएर हामीकहाँ आओ।

आ यातं नहुषस्पर्यान्तरिक्षात् सुवृक्तिभिः।
पिबाथो अश्विना मधु कण्वानां सवने सुतम् ॥३॥
हे अश्विनीकुमारहरू हो ! तिमीहरू हाम्रा प्रार्थनाले प्रसन्न भएर अन्तरिक्षमा पदार्पण गर। कण्ववंशीय ऋषिहरूले आयोजना गरेको यज्ञमा पुगेपछि तिमीहरू पेलेर तयार गरेको मधुर सोमरस पान गर।

आ नो यातं दिवस्पर्यान्तरिक्षादधप्रिया।
पुत्रः कण्वस्य वामिह सुषाव सोम्यं मधु ॥४॥

भूलोक वासीहरूले त्रिकालेको सोमरस रुचाउने हे अश्विनीकुमार हो ! तिमीहरू दिव्यलोक र अन्तरिक्षलोकबाट हाम्रा नजिकै आओ। तिमीहरूका निम्ति मह मिसिएको सोमरस कण्वका वंशजहरूले तयार गरेका छन्।

आ नो यातमुपश्रुत्यश्विना सोमपीतये।
स्वाहा स्तोमस्य वर्धना प्र कवी धीतिभिर्नरा ॥५॥

हे ज्ञानी अश्विनीकुमार हो ! हामीले प्रार्थना गर्दाखेरि तिमीहरू समृद्धशाली बन्दछौ। त्यसैले यज्ञमा सोमपान गर्नका लागि अवश्य आओ।

यच्चिद्धि वां पुर ऋषयो जुहूरेऽवसे नरा।
आ यातमश्विना गतमुपेमां सुष्टुतिं मम ॥६॥

हे अश्विनीकुमार हो ! प्राचीन कालमा आफ्नो सुरक्षाका लागि ऋषिहरूले आह्वान गर्दा तिमीहरू उपस्थित भयौ। हामीले भावनापूर्वक प्रार्थना गर्दा तिमीहरू फेरि आओ।

दिवश्चिद्रोचनादध्या नो गन्तं स्वर्विदा।
धीभिर्वत्सप्रचेतसा स्तोमेभिर्हवनश्रुता ॥७॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू आत्मज्ञानी छौ र आफ्ना भक्तको पुकार पनि सुन्दै पुत्रसमान प्रेम गर्दछौ। हाम्रो स्तुति सुनेर तिमीहरू दिव्यलोक र अन्तरिक्षलोकबाट अवश्य आओ।

किमन्ये पर्यासतेऽस्मत्स्तोमेभिरश्विना।
पुत्रः कण्वस्य वामृषिर्गीर्भिर्वत्सो अवीवृधत् ॥८॥

हाम्रा अतिरिक्त अरू कुन उपासकले राम्रोसित प्रार्थना गर्दछ ? हे अश्विनीकुमार हो ! कण्व ऋषिका पुत्र वत्स ऋषि आफ्ना स्तोत्रले तिमीहरूलाई समृद्ध गर्दछन्।

आ वां विप्र इहावसेऽह्वत्स्तोमेभिरश्विना।
अरिप्रा वृत्रहन्तमा ता नो भूतं मयोभुवा ॥९॥

हे पापरहित र वृत्रासुर मार्ने अश्विनीकुमार हो ! आफ्नो रक्षाका लागि याजकहरू आह्वान गर्दछन्। हे अश्विनीकुमारहरू हो ! हाम्रा लागि तिमीहरू कल्याणप्रद सिद्ध होओ।

आ यद्वां योषणा रथमतिष्ठद्वाजिनीवसू।
विश्वान्यश्विना युवं प्र धीतान्यगच्छतम् ॥१०॥

शक्तिशाली र धनवान् हे अश्विनीकुमार हो ! तिम्रा रथमा उषादेवी पूर्ण रूपेण सुशोभित हुँदा तिमीहरू दुवै ध्यानका चरम सीमामा पुगेका हुन्छौ।

अतः सहस्रनिर्णिजा रथेना यातमश्विना।
वत्सो वां मधुमद्वचोऽशंसीत्काव्यः कविः ॥११॥

हे अश्विनीकुमार हो ! विद्वान् क्रान्तदर्शी वत्स ऋषिले मधुर वाणीमा स्तोत्र गान गरे। त्यसैले तिमीहरू हजारौं किसिमले सुशोभित रथमा आरूढ भएर आओ।

पुरुमन्द्रा पुरूवसू मनोतरा रयीणाम्।
स्तोमं मे अश्विनाविममभि वह्नी अनूषाताम् ॥१२॥

हे धनवान् अश्विनीकुमार हो ! तिमीहरू दुवै मन लागेको ऐश्वर्यले प्रसन्नता प्रदान गर्छौ। तिमीहरू संसारका वहनकर्ता हौ। त्यसैले हाम्रो स्तुति सुनेर हर्षित होओ।

आ नो विश्वान्यश्विना धत्तं राधांस्यह्रया।
कृतं न ऋत्वियावतो मा नो रीरधतं निदे ॥१३॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै हामीलाई पवित्र ऐश्वर्य प्रदान गर र सिर्जनात्मक कार्य गर्न समर्थ बनाओ। हामीलाई निन्दकका अधीनमा पर्न नदेओ।

यन्नासत्या परावति यद्वा स्थो अध्यम्बरे।
अतः सहस्रनिर्णिजा रथेना यातमश्विना ॥१४॥

हजारौं किसिमका ऐश्वर्यले सम्पन्न तथा सत्यका पालक हे अश्विनीकुमार हो ! तिमीहरू दिव्यलोक वा कुनै अन्य लोकमा छौ भने आफ्ना रथमा यहाँ अवश्य आओ।

यो वां नासत्यावृषिर्गीर्भिर्वत्सो अवीवृधत।
तस्मै सहस्रनिर्णिजमिषं धत्तं घृतश्चुतम् ॥१५॥

सत्यका पालक हे अश्विनीकुमार हो ! वत्स ऋषिका प्रार्थनाले तिमीहरूलाई समृद्ध गराएका थिए, उनलाई हजारौँ किसिमले ऐश्वर्यवान् बनाओ।

प्रास्मा ऊर्जं घृतश्चुतमश्विना यच्छतं युवम्।
यो वां सुम्नाय तुष्टवद्वसूयाद्दानुनस्पती ॥१६॥

हे दानदाता अश्विनीकुमार हो ! सुखको कामना गर्ने साधकले तिमीहरूको प्रार्थना गर्दछन्। ऐश्वर्यको कामना गर्ने र यज्ञका लागि घिउको धारा समर्पित गर्ने याजकलाई शक्तिदायक अन्न प्रदान गर।

आ नो गन्तं रिशादसेमं स्तोमं पुरुभुजा।
कृतं नः सुश्रियो नरेमा दातमभिष्टये ॥१७॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै शत्रुका विनाशक र सज्जनको पालन गर्ने हौ। हाम्रो प्रार्थना ग्रहण गरेर श्रेष्ठ सौन्दर्ययुक्त सुखकारक पदार्थ प्रदान गर्न आओ।

आ वां विश्वाभिरूतिभिः प्रियमेधा अहूषत।
राजन्तावध्वराणामश्विना यामहूतिषु ॥१८॥

हे अश्विनीकुमार हो ! प्रियमेध ऋषिले देवताहरूको आह्वान गर्दाखेरि तिमीहरूलाई रक्षासाधनसँगै बोलाए। तिमीहरू यस श्रेष्ठ यज्ञमा आएर विराजमान होओ।

आ नो गन्तं मयोभुवाश्विना शम्भुवा युवम्।
यो वां विपन्यू धीतिभिर्गीर्भिर्वत्सो अवीवृधत् ॥१९॥

प्रशंसाका योग्य हे अश्विनीकुमार हो ! वत्स ऋषिका आनन्दवर्द्धक र शान्तिप्रदायक यज्ञ आदि कार्य तथा वचनले प्रसन्न भएपछि तिमीहरू दुवै हाम्रा नजिकै आओ।

याभिः कण्वं मेधातिथिं याभिर्वशं दशव्रजम्।
याभिर्गोशर्यमावतं ताभिर्नोऽवतं नरा ॥२०॥

हे अश्विनीकुमार हो ! कण्व, मेधातिथि, वश, दशव्रज, गोशर्यलाई रक्षा गर्ने संरक्षण साधनले हाम्रो पनि रक्षा गर।

याभिर्नरा त्रसदस्युमावतं कृत्व्ये धने।
ताभिः ष्व१स्माँ अश्विना प्रावतं वाजसातये ॥२१॥

हे अश्विनीकुमार हो ! योग्य ऐश्वर्यका प्राप्त गर्ने सम्बन्धमा रक्षणसाधनले त्रसदस्युलाई रक्षा गरेका थियौ, उनै साधनले ऐश्वर्य वितरण गर्नका लागि हाम्रो पनि रक्षा गर।

प्र वां स्तोमाः सुवृक्तयो गिरो वर्धन्त्वश्विना।
पुरुत्रा वृत्रहन्तमा ता नो भूतं पुरुस्पृहा ॥२२॥

अनेकौँका रक्षक र वृत्रहन्ता हे अश्विनीकुमार हो ! राम्रोसित उच्चारण गरेका स्तोत्रले तिमीहरूलाई समृद्ध गराओस्। तिमीहरू हामीले रोजेको धन प्रदान गर्दछौ।

त्रीणि पदान्यश्विनोराविः सान्ति गुहा परः।
कवी ऋतस्य पत्मभिरर्वाग्जीवेभ्यस्परि ॥२३॥

अश्विनीकुमारका तीन चक्र गोप्य क्षेत्रबाट पर रहन्छन्। तिनीहरू प्रत्यक्ष यज्ञरूपी रथबाट प्राणीका अगाडि प्रकट हुन्छन्।

## [सूक्त - ९]

ऋषि - शशकर्ण काण्व। देवता - अश्विनीकुमार। छन्द - अनुष्टुप् गायत्री ककुप्।

आ नूनमश्विना युवं वत्सस्य गन्तमवसे।
प्रास्मै यच्छतमवृकं पृथु च्छर्दिर्युयुतं या अरातयः ॥१॥

हे अश्विनीकुमार हो ! तिमीहरू वत्स ऋषिको सुरक्षाका निम्ति निश्चित आओ। उनलाई क्रोधी मानिसबाट सुरक्षित, विशाल आवास प्रदान गर र उनका शत्रु पर हटाइदेओ।

यदन्तरिक्षे यद्दिवि यत्पञ्च मानुषाँ अनु। नृम्णं तद्धत्तमश्विना ॥२॥

हे अश्विनीकुमार हो ! अन्तरिक्ष, दिव्यलोक र पाँच किसिमका मानिससित उपलब्ध रहने ऐश्वर्य हामीलाई पनि प्रदान गर।

**ये वां दंसांस्यश्विना विप्रासः परिमामृशुः। एवेत्काण्वस्य बोधतम् ॥३॥**

हे अश्विनीकुमार हो ! प्रार्थनाद्वारा तिमीहरूको कर्म थाहा पाउने कण्ववंशी विद्वान् पुरुष चिन र रक्षा गर।

**अयं वां घर्मो अश्विना स्तोमेन परि षिच्यते।**
**अयं सोमो मधुमान्वाजिनीवसू येन वृत्रं चिकेतथः ॥४॥**

हे अश्विनीकुमार हो ! तिम्रा निम्ति यस गर्मीमा मन्त्रले सेचन गरिंदै छ। हे बलले सम्पन्न देवताहरू हो ! तिमीहरूलाई वृत्र देखाउने र चिनाउन सक्ने मधुर सोम यही हो।

**यदप्सु यद्वनस्पतौ यदोषधीषु पुरुदंससा कृतम्। तेन माविष्टमश्विना ॥५॥**

हे अश्विनीकुमार हो ! तिमीहरूले औषधि, विशाल वृक्ष र जललाई रक्षा गरेको बल हामीलाई पनि प्रदान गर।

**यन्नासत्या भुरण्यथो यद्वा देव भिषज्यथः।**
**अयं वां वत्सो मतिभिर्न विन्धते हविष्मन्तं हि गच्छथः ॥६॥**

हे दान दाता अश्विनीकुमार हो ! तिमीहरू दुवै जगत्को पालन गर्ने र सबैलाई स्वस्थ राख्ने हौ। केवल ज्ञानका कारणले मात्रै स्तोताले तिमीहरूलाई प्राप्त गर्न सक्दैनन, किनभने तिमीहरू त हवि प्रदान गर्ने याजकका नजिकै जान्छौ।

**आ नूनमश्विनोर्ऋषिः स्तोमं चिकेत वामया।**
**आ सोमं मधुमत्तमं घर्मं सिञ्चादथर्वणि ॥७॥**

स्तोताले अश्विनीकुमारको स्तुति आफ्ना श्रेष्ठ बुद्धिले सम्पन्न गरे। मधुर सोमरस र घिउले सिञ्चित हवि उनीहरूलाई समर्पित गरे।

**आ नूनं रघुवर्तनिं रथं तिष्ठाथो अश्विना।**
**आ वां स्तोमा इमे मम नभो न चुच्यवीरत ॥८॥**

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै तेज गतिका रथमा आरुढ हुन्छौ। आकाशजस्तै विस्तृत हाम्रो स्तुति तिमीहरूलाई प्राप्त होस्।

**यदद्य वां नासत्योक्थैराचुच्युवीमहि।**
**यद्वा वाणीभिरश्विनेवेत्काण्वस्य बोधतम् ॥९॥**

हे सत्यनिष्ठ अश्विनीकुमार हो ! शास्त्रका वचन र स्तुतिले तिमीहरूलाई बोलाएझैं म कण्व ऋषि पनि स्तोत्रका माध्यमबाट तिमीहरूलाई आह्वान गर्दछु।

**यद्वा कक्षीवाँ उत यद्व्यश्व ऋषिर्यद्वां दीर्घतमा जुहाव।**
**पृथी यद्वां वैन्यः सादनेष्वेवेदतो अश्विना चेतयेथाम् ॥१०॥**

हे अश्विनीकुमारहरू हो ! कक्षीवान्, व्यश्व, दीर्घतमाले आह्वान गरेझैं यस बेला हामी तिमीहरूलाई आह्वान गर्दछौं। तिमीहरू यस मनको भावना बुझ।

**यातं छर्दिष्पा उत नः परस्पा भूतं जगत्पा उत नस्तनूपा।**
**वर्तिस्तोकाय तनयाय यातम् ॥११॥**

सबैका घरको रक्षा गर्ने हे अश्विनीकुमार हो ! हामी, हाम्रो घर र सबै संसारका पालक तिमीहरू नै हौ। हाम्रा पुत्रपौत्रको कल्याणका लागि घरमा आओ।

**यदिन्द्रेण सरथं याथो अश्विना यद्वा वायुना भवथः समोकसा।**
**यदादित्येभिर्ऋभुभिः सजोषसा यद्वा विष्णोर्विक्रमणेषु तिष्ठथः ॥१२॥**

हे अश्विनीकुमार हो ! यदि इन्द्रदेवसँग रथमा आसीन भएर गमन गर्दछौ, वायुदेवसँग एकै ठाउँमा बस्दछौ, अदितिपुत्र अथवा ऋभु देवताहरूसित प्रेमपूर्वक रहन्छौ र विष्णुका विशिष्ट पदक्षेपसँग तीनै लोकमा विराजमान हुन्छौ भने हाम्रा नजिक पनि आओ।

**यदद्याश्विनावहं हुवेय वाजसातये।**
**यत्पृत्सु तुर्वणे सहस्तच्छ्रेष्ठमश्विनोरवः ॥१३॥**

अश्विनीकुमारको संरक्षण विशिष्ट कोटिको छ। सङ्ग्राममा शत्रु विनाश गर्न पूर्ण रूपले सक्षम छन्। त्यसैले रक्षाका लागि उनलाई हामीले बोलाउँदा निश्चय नै आउनेछन्।

आ नूनं यामश्विनेमा हव्यानि वां हिता।
इमे सोमासो अधि तुर्वशे यदाविमे कण्वेषु वामथ ॥१४॥

सोमरस तुर्वश र यदुका घरमा विद्यमान छ। कण्वका पुत्रलाई प्रदान गरेको त्यही हो। हे अश्विनीकुमारहरू हो ! हव्यका लागि तयार सोमरस हो, त्यसैले तिमीहरू आओ।

यन्नासत्या पराके अर्वाके अस्ति भेषजम्।
तेन नूनं विमदाय प्रचेतसा छर्दिर्वत्साय यच्छतम् ॥१५॥

सत्यनिष्ठ हे अश्विनीकुमार हो ! अहङ्काररहित वत्स ऋषिलाई नजिकै वा पर पाइने औषधिसँगै रहनका लागि श्रेष्ठ आवास प्रदान गर।

अभुत्स्यु प्र देव्या साकं वाचाहमश्विनोः।
व्यावर्देव्या मतिं वि रातिं मर्त्येभ्यः ॥१६॥

अश्विनीकुमारका दिव्य वाणीले हामी चेतन भएका छौं। हे प्रकाशमान उषादेवी ! तिमी अन्धकार हटाएर सबै मानिसलाई सद्बुद्धि र उपयुक्त ऐश्वर्य प्रदान गर।

प्र बोधयोषो अश्विना प्र देवि सूनृते महि।
प्र यज्ञहोतारानुषक्प्र मदाय श्रवो बृहत् ॥१७॥

हे प्रकाशमान तथा महान् उषादेवी ! अश्विनीकुमारलाई प्रेरित गर। हे याजकहरू हो ! तिमीहरू अश्विनीकुमारलाई आनन्दप्रदायक प्रचुर हव्य प्रदान गर।

यदुषो यासि भानुना सं सूर्येण रोचसे।
आ हायमश्विनो रथो वर्तिर्याति नृपाय्यम् ॥१८॥

हे उषादेवी ! तिमी स्वर्णिम किरणले सम्पन्न हुँदा र सूर्यका तेजले प्रकाशित हुँदा अश्विनीकुमारको रथ मानिसलाई स्वास्थ्य लाभ गराउन यज्ञमण्डपमा प्रवेश गर्दछ।

यदापीतासो अंशवो गावो न दुह ऊधभिः।
यद्वा वाणीरनूषत प्र देवयन्तो अश्विना ॥१९॥

हे अश्विनीकुमार हो ! जति बेला पहेँलो वर्णका सोमलताहरू गाईका थुनबाट दुध दुहेझैँ निचोरिन्छन् र जुन बेला देवत्वको कामना गर्नेहरू स्तुति वचनले तिमीहरूको प्रार्थना गर्दछन्, त्यस बेला हामीलाई संरक्षण गर।

प्र द्युम्नाय प्र शवसे प्र नृषाह्याय शर्मणे। प्र दक्षाय प्रचेतसा ॥२०॥

श्रेष्ठ ज्ञानले सम्पन्न हे अश्विनीकुमार हो ! हामीलाई शक्ति, ऐश्वर्य, सहनशीलता र श्रेष्ठ कार्य गर्ने कौशल प्राप्त गर्ने प्रेरणा प्रदान गर।

यन्नूनं धीभिरश्विना पितुर्योना निषीदथः। यद्वा सुम्नेभिरुक्थ्या ॥२१॥

प्रशंसा गर्न योग्य हे अश्विनीकुमार हो ! तिमीहरू हाम्रा पिताजस्तै हौ। पिताले पुत्रका लागि प्रत्येक सुखका साधन उपलब्ध गराएझैँ हामीलाई हर्ष प्रदान गर।

[सूक्त - १०]

**ऋषि** - प्रगाथ काण्व। **देवता** - अश्विनीकुमार। **छन्द** - बृहती अनुष्टुप् पंक्ति प्रगाथ।

यत्स्थो दीर्घप्रसद्मनि यद्वादो रोचने दिवः।
यद्वा समुद्रे अध्याकृते गृहेऽत आ यातमश्विना ॥१॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै चाहे पृथ्वीरूपी विशाल यज्ञमण्डपमा रहेका होओ, वा प्रकाशमान दिव्यलोकमा वा अन्तरिक्षलोकमा नै, हाम्रा नजिक अवश्य आओ।

यद्वा यज्ञं मनवे संमिमिक्षथुरेवेत्काण्वस्य बोधतम्।
बृहस्पतिं विश्वान्देवाँ अहं हुव इन्द्राविष्णू अश्विनावाशुहेषसा ॥२॥

हे अश्विनीकुमार हो ! मनुको यज्ञ राम्ररी सिञ्चित गरेका थियौ, कण्वका पुत्रको यज्ञ पनि उस्तै मान। बृहस्पति, इन्द्र, विष्णु र सबै देवतासँगै तिमीहरूलाई आह्वान गर्दछौं।

त्या न्व१श्विना हुवे सुदंससा गृभे कृता।
ययोरस्ति प्र णः सख्यं देवेष्वध्याप्यम् ॥३॥

हामीसित मित्रता भएका अश्विनीकुमारहरू श्रेष्ठ कर्म गर्दछन्। उनीहरू हाम्रो आहुति प्राप्त गर्नका लागि प्रकट भएका छन्। देवताहरूसित उनीहरूको मित्रता उच्च कोटिको छ। त्यसैले हामी उनीहरूको आह्वान गर्दछौं।

यथोरधि प्र यज्ञा असुरे सन्ति सूरयः।
ता यज्ञस्याध्वरस्य प्रचेतसा स्वधाभिर्या पिबतः सोम्यं मधु ॥४॥

दुवै अश्विनीकुमार अज्ञानीहरूमा ज्ञान प्रचार गर्दै सन्मार्ग देखाउँछन्। उनीहरू दुवै हिंसा विहीन यज्ञ ज्यादै कुशलताका साथ सञ्चालन गर्दछन्। उनीहरू मधुर रस मिसिएको सोमरस पान गरुन्।

यदद्याश्विनावपाग्यत्प्राक्स्थो वाजिनीवसू।
यद् द्रुह्यव्यनवि तुर्वशे यदौ हुवे वामथ मा गतम् ॥५॥

शक्तिसम्पन्न हे अश्विनीकुमारहरू हो ! हामीले आह्वान गर्दा तिमीहरू पूर्व वा पश्चिम दिशामा भए पनि अथवा द्रुह्य, अनु वा यदुका नजिकै भए पनि अवश्य आओ।

यदन्तरिक्षे पतथः पुरुभुजा यद्वेमे रोदसी अनु।
यद्वा स्वधाभिरधितिष्ठथो रथमत आ यातमश्विना ॥६॥

विशाल भुजा भएका हे अश्विनीकुमार हो ! आफ्ना तेजोबलले रथमा आरुढ भएर अन्तरिक्षलोक, दिव्यलोक र पृथ्वीलोक विचरण गर्दा तिमीहरू हाम्रा नजिकै आओ।

[सूक्त – ११]

ऋषि – वत्स काण्व। देवता – अग्नि। छन्द – गायत्री वर्धमाना त्रिष्टुप्।

त्वमग्ने व्रतपा असि देव आ मर्त्येष्वा। त्वं यज्ञेष्वीड्यः ॥१॥

दिव्य गुणले सम्पन्न हे अग्निदेव ! तिमी मानिस र देवताबीचको श्रेष्ठ सङ्कल्पका संरक्षक हौ। त्यसैले समस्त यज्ञमा तिम्रो उपस्थितिका लागि प्रार्थना गरिन्छ।

त्वमसि प्रशस्यो विदथेषु सहन्त्य। अग्ने रथीरध्वराणाम् ॥२॥

शत्रुलाई परास्त गर्ने हे अग्निदेव ! तिमी हिंसारहित यज्ञको नेतृत्वकर्ता हौ, त्यसैले समस्त यज्ञमा तिम्रो स्तुति हुन्छ।

स त्वस्मदप द्विषो युयोधि जातवेदः। अदेवीरग्ने अरातीः ॥३॥

समस्त ज्ञानसम्पन्न हे अग्निदेव ! तिमी शत्रु र उनको सेना हामीदेखि पर हटाऊ।

अन्ति चित्सन्तमह यज्ञं मर्तस्य रिपोः। नोप वेषि जातवेदः ॥४॥

हे ज्ञानसम्पन्न अग्निदेव ! शत्रुको यज्ञ नजिकै भए पनि तिमी त्यहाँ जान मन गर्दैनौ।

मर्ता अमर्त्यस्य ते भूरि नाम मनामहे। विप्रासो जातवेदसः ॥५॥

हे अग्निदेव ! तिमी सबै पदार्थको जानकारी भएका ज्ञानी हौ। तिम्रो विराट् अविनाशी नामको हामी चिन्तन गर्दछौँ।

विप्रं विप्रासोऽवसे देवं मर्तास ऊतये। अग्निं गीर्भिर्हवामहे ॥६॥

मेधावी अग्निदेवलाई प्रसन्न गर्नका लागि हामी स्तुति गर्दै आहुति समर्पित गर्दछौँ। आफ्नो रक्षाका लागि हामी उनलाई आह्वान गर्दछौँ।

आ ते वत्सो मनो यमत्परमाच्चित्सधस्थात्। अग्ने त्वांकामया गिरा ॥७॥

सर्वव्यापी प्रदीप्त हे अग्निदेव ! हामी तिम्रा पुत्र हौँ, हृदयदेखि नै स्तुति गर्दै तिमीलाई आफूतिर आकर्षित गर्न चाहन्छौँ।

पुरुत्रा हि सदृङ्ङसि विशो विश्वा अनु प्रभुः। समत्सु त्वा हवामहे ॥८॥

हे अग्निदेव ! तिमी सर्वत्र समान दृष्टि राख्ने र सबै प्रजाका अधिपति हौ। त्यसैले युद्धमा आफ्नो सुरक्षाका लागि तिमीलाई आह्वान गर्दछौँ।

समत्स्वग्निमवसे वाजयन्तो हवामहे। वाजेषु चित्रराधसम् ॥९॥

हामी सङ्ग्राममा बल र संरक्षण प्राप्त गर्नका लागि अद्भुत सामर्थ्यवान् एवं धनले सम्पन्न अग्निदेवलाई आह्वान गर्दछौँ।

प्रत्नो हि कमीड्यो अध्वरेषु सनाच्च होता नव्यश्च सत्सि।
स्वां चाग्ने तन्वं पिप्रयस्वास्मभ्यं च सौभगमा यजस्व ॥१०॥

हे अग्निदेव ! उहिलेदेखि नै तिमी समस्त यज्ञमा प्रार्थनीय र आनन्द प्रदायक छौ। धेरै पहिलेदेखि तिमी यज्ञमा होताका रूपमा र प्रार्थना योग्य भएर आसीन हुने गरेका छौ। तिमी हविद्वारा स्वयं प्रसन्न होऊ र हामीलाई सौभाग्यशाली बनाऊ।

[सूक्त – १२]

**ऋषि** – पर्वत काण्व। **देवता** – इन्द्र। **छन्द** – उष्णिक्।

**य इन्द्र सोमपातमो मदः शविष्ठ चेतति। येना हंसि न्यत्रिणं तमीमहे॥१॥**

सोमपान गर्नेमा सर्वश्रेष्ठ बलशाली हे इन्द्रदेव ! तिमी कार्यप्रति उल्लसित र जागरुक छौ। तिमीले घातक असुर नष्ट गराउने बल हामी माग्दछौं।

**येना दशग्वमध्रिगुं वेपयन्तं स्वर्णरम्। येना समुद्रमाविथा तमीमहे॥२॥**

हे इन्द्रदेव ! तिमीले जुन बलले अङ्गिरा वंशीय अध्रिगु, अन्धकार नाश गर्ने सूर्य, समुद्र वा अन्तरिक्षको रक्षा गरेका थियौ, उही शक्ति हामी तिमीसित माग्दछौं।

**येन सिन्धुं महीरपो रथाँ इव प्रचोदयः। पन्थामृतस्य यातवे तमीमहे॥३॥**

हे इन्द्रदेव ! तिमीले जुन बलले विशाल जलराशिलाई रथको जस्तै गतिमा समुद्रतिर जान प्रेरित गरेका थियौ, उही बल हामी यज्ञीय मार्गमा गमन गर्नका लागि माग्दछौं।

**इमं स्तोममभिष्टये घृतं न पूतमद्रिवः। येना नु सद्य ओजसा ववक्षिथ॥४॥**

वज्रधारी हे इन्द्रदेव ! हामीले गरेको घिउजस्तो पवित्र स्तुति तिमी ग्रहण गर। बलसम्पन्न भएर हाम्रा लागि वाञ्छित ऐश्वर्य चाँडै प्रदान गर।

**इमं जुषस्व गिर्वणः समुद्र इव पिन्वते। इन्द्र विश्वाभिरूतिभिर्ववक्षिथ॥५॥**

हे इन्द्रदेव ! नदीको पानी समुद्रतिर गएझैं हाम्रा प्रार्थनाले समृद्ध भएर तिमी आफ्ना समस्त रक्षण साधनले हाम्रो सुरक्षा गर।

**यो नो देवः परावतः सखित्वनाय मामहे। दिवो न वृष्टिं प्रथयन्ववक्षिथ॥६॥**

दिव्य गुणले सम्पन्न इन्द्रदेव सुदूर स्थानबाट आएर हाम्रो मित्रता बलियो बनाउने ऐश्वर्य प्रदान गरे। हे इन्द्रदेव ! अन्तरिक्षबाट वर्षा भएजस्तै प्रचुर धन हामीलाई प्रदान गर।

**ववक्षुरस्य केतव उत वज्रो गभस्त्योः। यत्सूर्यो न रोदसी अवर्धयत्॥७॥**

सूर्यजस्तै इन्द्रदेवले वर्षा आदि असल कार्यले द्युलोक र पृथ्वीलोकलाई समृद्ध गराउँदा उनको विजय पताका र हातको वज्र अत्यन्त सुशोभित देखिन्छन्।

**यदि प्रवृद्ध सत्पते सहस्रं महिषाँ अघः। आदित्त इन्द्रियं महि प्र वावृधे॥८॥**

सत्पात्रका पालक महान् हे इन्द्रदेव ! तिमीले हजारौं राक्षसको वध गर्दा तिम्रो शक्ति अरू बढेर गयो।

**इन्द्र सूर्यस्य रश्मिभिर्न्यर्शसानमोषति। अग्निर्वनेव सासहिः प्र वावृधे॥९॥**

अग्निदेवले जङ्गल डढाएर खरानी बनाएझैं इन्द्रदेव सूर्यका किरणले दुःख दिने शत्रु डढाउँन्छन्। शत्रुको विनाश गरेर उनी समृद्ध हुन्छन्।

**इयं त ऋत्वियावती धीतिरेति नवीयसी। सपर्यन्ती पुरुप्रिया मिमीत इत्॥१०॥**

हे इन्द्रदेव ! सबैको सम्मान गर्ने, यज्ञमा प्रयुक्त हुने, नूतन र धेरैले रुचाएको स्तुति तिम्रो गुणगान गर्दै तिम्रा नजिक पुग्दछ।

**गर्भो यज्ञस्य देवयुः क्रतुं पुनीत आनुषक्। स्तोमैरिन्द्रस्य वावृधे मिमीत इत्॥**

यज्ञ सम्पन्न गरेर देवता प्राप्त गर्ने कामना भएका याजकले आफ्ना कार्य राम्ररी सम्पन्न गर्दछन्। उनीहरूका प्रार्थनाले इन्द्रदेवको गुणगान गरेर समृद्ध गराउँछन्।

**सनिर्मित्रस्य पप्रथ इन्द्रः सोमस्य पीतये। प्राची वाशीव सुन्वते मिमीत इत्॥**

याजकले स्तुतिगान गर्दै समर्पण गरेको सोमरस आफ्ना मित्रलाई ऐश्वर्य प्रदान गर्ने इन्द्रदेव पान गर्दछन्। यसबाट उनको यश वृद्धि हुन्छ।

**यं विप्रा उक्थवाहसोऽभिप्रमन्दुरायवः। घृतं न पिप्य आसन्यृतस्य यत्॥१३॥**

ज्ञानी र प्रार्थना गर्ने याजकहरू यज्ञका अग्निमा स्थापित गरिने घिउको आहुतिजस्तै सोमरूपी हवि इन्द्रदेवका मुखमा समर्पित गरेर उनलाई प्रसन्न गर्दछन्।

**उत स्वराजे अदितिः स्तोममिन्द्राय जीजनत्। पुरुप्रशस्तमूतय ऋतस्य यत्॥**

यज्ञरूपी सत्यको रक्षा गर्ने अदितिले स्वप्रकाशित इन्द्रदेवको प्रशंसा गर्दै अनेकौं उत्तम स्तोत्र रचना गरिन्।

**अभि वह्नय ऊतयेऽनूषत प्रशस्तये। न देव विव्रता हरी ऋतस्य यत् ॥१५॥**

आफ्नो प्रशंसा र सुरक्षाका लागि याजकहरू इन्द्रदेवलाई प्रार्थना गर्दछन्। हे इन्द्रदेव ! विभिन्न श्रेष्ठ कर्म गर्ने तिमीलाई अश्वले यज्ञस्थलमा लिएर आऊन्।

**यत्सोममिन्द्र विष्णवि यद्वा घ त्रित आप्त्ये। यद्वा मरुत्सु मन्दसे समिन्दुभिः ॥**

हे इन्द्रदेव ! यज्ञमा विष्णु उपस्थित भएपछि तिमीले सोमपान गरेका थियौ। त्रितआप्त्य र मरुत्‌हरूसँग सोमरस सेवन गरेर आनन्दित हुने तिमी हाम्रा यज्ञमा पनि सोमपान गरेर आनन्दित होऊ।

**यद्वा शक्र परावति समुद्रे अधि मन्दसे। अस्माकमित्सुते रणा समिन्दुभिः ॥**

हे इन्द्रदेव ! अरूतिर टाढा सोमपान गरेर आनन्दित भएझैं हाम्रा यज्ञमा पनि सोमपान गरेर हर्षित होऊ।

**यद्वासि सुन्वतो वृधो यजमानस्य सत्पते।**
**उक्थे वा यस्य रण्यसि समिन्दुभिः ॥१८॥**

सत्यका पालक हे इन्द्रदेव ! तिमी जुन याजकका यज्ञमा विधिवत् सोमपान गरेर आनन्दित हुन्छौ, उसै याजकलाई तिमी बढाउँछौ।

**देवंदेवं वोऽवस इन्द्रमिन्द्रं गृणीषणि। अधा यज्ञाय तुर्वणे व्यानशुः ॥१९॥**

सबैको रक्षा गर्नका लागि देवाधिदेव इन्द्रदेवको हामी प्रार्थना गर्दछौं। हाम्रो प्रार्थना सुनेर उनी शत्रु हनन गर्न र यज्ञमा सहभागी हुन आऊन्।

**यज्ञोभिर्यज्ञवाहसं सोमेभिः सोमपातमम्। होत्राभिरिन्द्रं वावृधुर्व्यानशुः ॥२०॥**

यज्ञमा बोलाएर हव्य प्रदान गर्न योग्य तथा सर्वाधिक सोमपान गर्न योग्य इन्द्रदेवलाई याजकहरू यज्ञ, सोम तथा प्रार्थनाले समृद्ध गर्दछन् र उनको अनुग्रह प्राप्त गर्दछन्।

**महीरस्य प्रणीतयः पूर्वीरुत प्रशस्तयः। विश्वा वसूनि दाशुषे व्यानशुः ॥२१॥**

इन्द्रदेवको नीति अनेक खालको छ। उनी प्राचीन कालदेखि नै यशस्वी छन्। दान दातालाई उनी प्रचुर ऐश्वर्य प्रदान गर्दछन्।

**इन्द्रं वृत्राय हन्तवे देवासो दधिरे पुरः। इन्द्रं वाणीरनूषता समोजसे ॥२२॥**

देवताले वृत्र वध गर्नका लागि इन्द्रदेवलाई अगुवा बनाए। त्यही शक्ति प्राप्त गर्नका निमित्त हाम्रा वाणीले उनको प्रार्थना गर्दछ।

**महान्तं महिना वयं स्तोमेभिर्हवनश्रुतम्। अर्कैरभि प्र णोनुमः समोजसे ॥२३॥**

आफ्ना सामर्थ्यले महान् बनेका र याजकको पुकार सुन्ने इन्द्रदेवलाई हामी प्रार्थना गर्छौं। हामी बल प्राप्तिका निमित्त यज्ञ तथा स्तवनले उनको सम्मान गर्दछौं।

**न यं विविक्तो रोदसी नान्तरिक्षाणि वज्रिणम्।**
**अमादिदस्य तित्विषे समोजसः ॥२४॥**

वज्र धारण गर्ने इन्द्रदेवलाई द्युलोक, पृथ्वीलोक र अन्तरिक्षलोक कुनैले पनि आफूबाट अलग गर्न सक्दैनन्। उनै शक्तिशाली इन्द्रदेवका तेजले सम्पूर्ण जगत् आलोकित छ।

**यदिन्द्र पृतनाज्ये देवास्त्वा दधिरे पुरः। आदित्ते हर्यता हरी ववक्षतुः ॥२५॥**

हे इन्द्रदेव ! सङ्ग्राममा देवताले तिमीलाई सबैको अगुवा बनाएका बेला दुई वटा बलशाली अश्वले तिमीलाई त्यहाँ पुर्‍याए।

**यदा वृत्रं नदीवृतं शवसा वज्रिन्नवधीः। आदित्ते हर्यता हरी ववक्षतुः ॥२६॥**

वज्रधारी हे इन्द्रदेव ! नदीको जल अवरुद्ध गर्ने वृत्रको वध गर्नका लागि दुई वटा बलवान् अश्वले तिमीलाई त्यहाँ पुर्‍याएका बेला आफ्नै बाहुबलले त्यसको वध गर्‍यौ।

**यदा ते विष्णुरोजसा त्रीणि पदा विचक्रमे। आदित्ते हर्यता हरी ववक्षतुः ॥**

हे इन्द्रदेव ! विष्णुदेवले आफ्ना शक्तिले तीन पाइलाले तीनै लोकलाई ओगटेका बेला दुई वटा बलवान् अश्वलाई वाहन बनाएर तिमी त्यहाँ पुगेका थियौ।

**यदा ते हर्यता हरी वावृधाते दिवेदिवे। आदित्ते विश्वा भुवनानि येमिरे ॥२८॥**

हे इन्द्रदेव ! तिम्रा बलशाली अश्व दिनदिनै समृद्ध भएपछि तिमीले समस्त जगत्‌लाई आफ्ना नियन्त्रणमा बनायौ।

यदा ते मारुतीर्विशस्तुभ्यमिन्द्र नियेमिरे। आदित्ते विश्वा भुवनानि येमिरे॥२९॥
हे इन्द्रदेव ! तिम्रा निमित्त समस्त प्राणीलाई मरुत्हरूले नियन्त्रण गरेका बेला तिमी सम्पूर्ण लोकलाई नै नियमित गराउँछौ।

यदा सूर्यममुं दिवि शुक्रंज्योतिरधारयः। आदित्ते विश्वा भुवनानि येमिरे॥३०॥
हे इन्द्रदेव ! तेजयुक्त र आलोकवान् सूर्यलाई तिमीले दिव्यलोकमा स्थापित गर्‍यौ। त्यसपछि नै तिमीले समस्त लोकलाई नियन्त्रित गरेका थियौ।

इमां त इन्द्र सुष्टुतिं विप्र इयर्ति धीतिभिः। जामिं पदेव पिप्रतीं प्राध्वरे॥३१॥
व्यक्तिले आफ्ना दाजुभाइलाई असल दिशामा प्रेरित गरेझैं ज्ञानी पुरुषहरू हर्ष बढाउने प्रार्थनाले इन्द्रदेवलाई यज्ञीय कर्मतर्फ प्रेरित गरेर लैजान्छन्।

यदस्य धामनि प्रिये समीचीनासो अस्वरन्। आभा यज्ञस्य दोहना प्राध्वरे॥३२
यज्ञको सोमरस पेल्ने बेलामा इन्द्रदेवको प्रिय स्थान यज्ञमण्डपमा स्तोताहरू एकत्र भएर उनको प्रार्थना गर्दछन्।

सुवीर्यं स्वश्व्यं सुगव्यमिन्द्र दद्धि नः। होतेव पूर्वचित्तये प्राध्वरे॥३३॥
हे इन्द्रदेव ! हामीलाई श्रेष्ठ शक्ति, श्रेष्ठ अश्व र श्रेष्ठ गाईले युक्त ऐश्वर्य प्रदान गर। हामी यज्ञका होताजस्तै ज्ञानले सम्पन्न बन्नका लागि तिम्रो प्रार्थना गर्दछौं।

[सूक्त - १३]

ऋषि - नारद काण्व। देवता - इन्द्र। छन्द - उष्णिक्।

इन्द्रः सुतेषु सोमेषु क्रतुं पुनीत उक्थ्यम्। विदे वृधस्य दक्षसो महान्हि षः॥१॥
हे इन्द्रदेव ! तयार गरिएको सोमरस पान गरेर तिमी यजमान र स्तोतालाई उन्नतितिर बढाउने शक्ति प्रदान गर्दछौ। तिमी महान् हुनाले दुवैलाई पवित्र गराउँछौ।

स प्रथमे व्योमनि देवानां सदने वृधः। सुपारः सुश्रवस्तमः समप्सुजित्॥२॥
दुःखबाट छुट्याउने, श्रेष्ठ कीर्ति हुने र आकाशमा रहने शत्रु जित्ने इन्द्रदेव विशाल अन्तरिक्षमा विद्यमान देवतानिकट रहेर सबैलाई समृद्ध तुल्याउँछन्।

तमह्वे वाजसातय इन्द्रं भराय शुष्मिणम्। भवा नः सुम्ने अन्तमः सखा वृधे॥
हामी बलवान् इन्द्रदेवलाई अन्न वृद्धि गर्नका लागि यज्ञमा बोलाउँछौं। हे इन्द्रदेव ! सुख एवं उन्नतिका समयमा मार्गदर्शकका रूपमा हाम्रा छेउमा आइदेऊ।

इयं त इन्द्र गिर्वणो रातिः क्षरति सुन्वतः। मन्दानो अस्य बर्हिषो वि राजसि॥
स्तुतियोग्य हे इन्द्रदेव ! यज्ञमा प्रदान गरिएको सोमरसको आहुति तिम्रा निम्ति प्रवाहित हुँदै छ। तिमी प्रसन्न मनले यस आसनमा विराजमान होऊ।

नूनं तदिन्द्र दद्धि नो यत्त्वा सुन्वन्त ईमहे। रयिं नश्चित्रमा भरा स्वर्विदम्॥५॥
हे इन्द्रदेव ! सोमयज्ञ गर्दै इच्छित ऐश्वर्य र आत्मिक सुख लाभ गराउने सम्पत्ति प्रदान गर भन्ने तिमीसित हामी याचना गर्दछौं।

स्तोता यत्ते विचर्षणिरतिप्रशर्धयद्गिरः। वया इवानु रोहते जुषन्त यत्॥६॥
हे इन्द्रदेव ! विद्वान् स्तोता शत्रु परास्त गर्न तिम्रो स्तुति गर्दछन्। स्तुतिले हर्षित भएर तिम्रो बल, रुखका हाँगाझैं बढ्दै जान्छ।

प्रत्नवज्जनया गिरः शृणुधी जरितुर्हवम्। मदेमदे ववक्षिथा सुकृत्वने॥७॥
हे इन्द्रदेव ! उहिलेको जस्तै स्तोत्र प्रकट गर र स्तोताको प्रार्थना सुनेर हर्षित होऊ। यज्ञ आदि श्रेष्ठ कर्म गर्नेलाई ऐश्वर्य प्रदान गर।

क्रीळन्त्यस्य सूनृता आपो न प्रवता यतीः। अया धिया य उच्यते पतिर्दिवः॥
नदीको पानी ओरालोतिर बगेझैं इन्द्रदेवका निम्ति गरिएको प्रार्थना उनका निकट पुग्दछन्। दिव्यलोकका स्वामी इन्द्रदेव यिनै प्रार्थनाले प्रसन्न हुन्छन्।

उतो पतिर्य उच्यते कृष्टीनामेक इद्वशी। नमोवृधैरवस्युभिः सुते रण॥९॥
स्तुतिकर्ता साधकलाई समृद्ध गर्ने र सुरक्षाको कामना गर्नेलाई आफ्ना वशमा बनाउने हे इन्द्रदेव ! तिमी सबैका एक मात्र पालक हौ भनेर प्रसिद्ध छौ। सोमयज्ञमा हर्षित होऊ।

**स्तुहि श्रुतं विपश्चितं हरी यस्य प्रसक्षिणा। गन्तारा दाशुषो गृहं नमस्विनः ॥१०**
हे याजकहरू हो ! ज्ञानी र यशस्वी इन्द्रदेवको प्रार्थना गर। शत्रु परास्त गर्ने इन्द्रदेवलाई उनका अश्व, स्तुतिकर्ता र दानी याजकले घरमा लैजान्छन्।

**तूतुजानो महेमतेऽश्वेभिः प्रुषितप्सुभिः। आ याहि यज्ञमाशुभिः शमिद्धि ते ॥११**
ओजस्वी रूप र द्रुतगामी अश्व भएका महान् बुद्धिमान् हे इन्द्रदेव ! हाम्रा यज्ञमा चाँडै आऊ। तिम्रो आगमन सबैका लागि हितकारी छ।

**इन्द्र शविष्ठ सत्पते रयिं गृणत्सु धारय। श्रवः सूरिभ्यो अमृतं वसुत्वनम् ॥१२॥**
हे शक्तिशाली र सत्यका पालक इन्द्रदेव ! प्रार्थना गर्नेलाई ऐश्वर्य र ज्ञानीलाई अक्षय धन प्रदान गर।

**हवे त्वा सूर उदिते हवे मध्यन्दिने दिवः। जुषाण इन्द्र सप्तिभिर्न आ गहि ॥**
हे इन्द्रदेव ! सूर्योदय र मध्याह्न समयमा हामी तिमीलाई आह्वान गर्दछौं। तिमी हाम्रो स्तुति सुनेर आफ्ना अश्वमा हाम्रा नजिक आऊ।

**आ तू गहि प्र तु द्रव मत्स्वा सुतस्य गोमतः। तन्तुं तनुष्व पूर्व्यं यथा विदे ॥१४**
हे इन्द्रदेव ! तिमी यथाशीघ्र आऊ र गाईको दुध मिसेको सोमरस पिएर हर्षित होऊ। पहिलेको जस्तै ऐश्वर्य प्रदान गर्नका लागि तिमी यज्ञ विस्तृत गराऊ।

**यच्छक्रासि परावति यदर्वावति वृत्रहन्। यद्वा समुद्रे अन्धसोऽवितेदसि ॥१५॥**
हे इन्द्रदेव ! तिमी शक्तिशाली बनेर वृत्रको वध गर्दछौ। टाढा, नजिक वा आकाशमा जहाँसुकै भए पनि सोमरस पान गरेर हाम्रो संरक्षक भइदेऊ।

**इन्द्र वर्धन्तु नो गिर इन्द्रं सुतास इन्दवः। इन्द्रे हविष्मतीर्विशो अराणिषुः ॥१६॥**
हाम्रा प्रार्थनाले इन्द्रदेवको गुणगान गर्दछ र पेलेर तयार गरेको सोमरसले उनलाई समृद्ध गराउँछ। यज्ञ गर्ने साधकहरू इन्द्रदेवप्रति साधनारत भइरहन्छन्।

**तमिद्विप्रा अवस्यवः प्रवत्वतीभिरूतिभिः। इन्द्रं क्षोणीरवर्धयन्वया इव ॥१७॥**
सुरक्षाको कामना भएका मेधावी शीघ्रकर्मी, संरक्षक इन्द्रदेवको स्तवन गर्दछन्। पृथ्वीमा आश्रित सबै जीव इन्द्रदेवका शाखाजस्तो भएर उनलाई समृद्ध पार्दछन्।

**त्रिकद्रुकेषु चेतनं देवासो यज्ञमलत। तमिद्वर्धन्तु नो गिरः सदावृधम् ॥१८॥**
देवताहरूले त्रिकद्रुक नामका यज्ञमा महान् र चेतनायुक्त इन्द्रदेवको गुणगान गरे। हाम्रा प्रार्थनाले उनलाई समृद्ध गराऊन्।

**स्तोता यत्ते अनुव्रत उक्थान्यृतुथा दधे। शुचिः पावक उच्यते सो अद्भुतः ॥**
हे इन्द्रदेव ! प्रार्थना गर्ने याजकहरू विभिन्न ऋतुअनुसारका स्तोत्रले तिमीलाई स्तुति गरेर पवित्र हुन्छन्।

**तदिद्रुद्रस्य चेतति यह्वं प्रत्नेषु धामसु। मनो यत्रा वि तद्दधुर्विचेतसः ॥२०॥**
विद्वान् पुरुषले आफ्नो मन एकाग्र गराउने रुद्रपुत्र मरुत्‌हरू पुराना ठाउँमा छन्।

**यदि मे सख्यमावर इमस्य पाह्यन्धसः। येन विश्वा अति द्विषो अतारिम ॥२१॥**
हे इन्द्रदेव ! हामीलाई आफ्नो साथी मान्दछौ भनेदेखि यो सोमरस पान गर। तिम्रा कृपाले हामी सबै शत्रु परास्त गर्न सकौं।

**कदा त इन्द्र गिर्वणः स्तोता भवाति शन्तमः।**
**कदा नो गव्ये अश्व्ये वसौ दधः ॥२२॥**
हे प्रार्थनीय इन्द्रदेव ! स्तुति गर्नेलाई कहिले प्रसन्न गराउँछौ ? हामीलाई गाई, अश्व आदि सम्पूर्ण ऐश्वर्य कहिले प्रदान गर्दछौ ?

**उत ते सुष्टुता हरी वृषणा वहतो रथम्। अजुर्यस्य मदिन्तमं यमीमहे ॥२३॥**
हे जरारहित र अत्यधिक हर्ष प्रदान गर्ने इन्द्रदेव ! प्रशंसनीय अश्वले तिमीलाई राम्रोसित हामीकहाँ ल्याऊन्।

**तमीमहे पुरुष्टुतं यह्वं प्रत्नाभिरूतिभिः। नि बर्हिषि प्रिये सददध द्विता ॥२४॥**
अनेकौंबाट स्तुति गरिने महान् इन्द्रदेवलाई पुराने स्तोत्रले हामी स्तुति गर्दछौं। उनी हाम्रा यज्ञमा बारम्बार आउँदै आसन ग्रहण गरुन्।

वर्धस्वा सु पुरुष्टुत ऋषिष्टुताभिरूतिभिः। धुक्षस्व पिप्युषीमिषमवा च नः॥
हे सबै तिरबाट प्रशंसित इन्द्रदेव ! अनेकौं ऋषिले तिम्रो स्तुति गर्छन्। तिमी आफ्ना संरक्षण साधनले हामीलाई समृद्ध गराऊ र पोषक अन्न प्रदान गर।

इन्द्र त्वमवितेदसीत्था स्तुवतो अद्रिवः। ऋतादियर्मि ते धियं मनोयुजम्॥२६॥
हे वज्रधारी इन्द्रदेव ! तिमी प्रार्थना गर्नेका संरक्षक हौ। हामी तिम्रो मन फुरुक्क पार्ने खालको प्रार्थना गर्दछौं।

इह त्या सधमाद्या युजानः सोमपीतये। हरी इन्द्र प्रतद्वसू अभि स्वर॥२७॥
हर्षित र ऐश्वर्यवान् हे इन्द्रदेव ! दुवै अश्व रथमा नारेर यज्ञमा सोमरस पान गर्न आऊ।

अभि स्वरन्तु ये तव रुद्रासः सक्षत श्रियम्। उतो मरुत्वतीर्विशो अभि प्रयः॥
हे इन्द्रदेव ! तिमी मरुत्हरू उनका प्रजासँग यज्ञमा आएर हव्य ग्रहण गर।

इमा अस्य प्रतूर्तयः पदं जुषन्त यद्दिवि। नाभा यज्ञस्य सं दधुर्यथा विदे॥२९॥
इन्द्रदेवका शत्रुनाशक मरुत् आदि प्रजा दिव्यलोकमा निवास गर्दछन्। ती मरुत्हरू यज्ञको केन्द्रस्थलमा हामीलाई ऐश्वर्य प्रदान गर्नका लागि एकत्रित हुन्छन्।

अयं दीर्घाय चक्षसे प्राचि प्रयत्यध्वरे। मिमीते यज्ञमानुषग्विचक्ष्य॥३०॥
पूर्व दिशामा सूर्यदेव निस्केपछि याजक यज्ञको शुभआरम्भ गर्दछन्। उनीहरू यज्ञको चेरचाह गर्दै दूरदृष्टि प्राप्त गर्नका लागि इन्द्रदेवको स्तुति गर्दछन्।

वृषायमिन्द्र ते रथ उतो ते वृषणा हरी। वृषा त्वं शतक्रतो वृषा हवः॥३१॥
हे इन्द्रदेव ! तिम्रा अश्व र रथ दुवै शक्तिशाली छन्। तिमी स्वयं नै सामर्थ्यवान् छौ। हे शतक्रतु ! तिम्रा लागि गरिने स्तुतिले कामना पूर्ति हुन्छ।

वृषा ग्रावा वृषा मदो वृषा सोमो अयं सुतः। वृषा यज्ञो यमिन्वसि वृषा हवः॥
सोम पेल्ने ढुङ्गा, पेलेर छानेको सोमरस र पिएर आएको आनन्द यी सबै शक्ति प्रदायक छन्। हे इन्द्रदेव ! तिमी गएको यज्ञ र तिम्रा लागि गाएको स्तोत्रले कामना पूरा हुन्छ।

वृषा त्वा वृषणं हुवे वज्रिञ्चित्राभिरूतिभिः।
वावन्थ हि प्रतिष्टुतिं वृषा हवः॥३३॥
हे इच्छा पूर्ण गर्ने र रक्षासाधनले सम्पन्न वज्रधारी इन्द्रदेव ! स्तोताले गरेको प्रार्थना तिमी स्वीकार गर्दछौ, त्यसैले तिम्रा स्तोत्र फलित हुन्छ।

[सूक्त - १४]

ऋषि - गोपूक्ति, अश्व सूक्ति काण्वायन। देवता - इन्द्र। छन्द - गायत्री।

यदिन्द्राहं यथा त्वमीशीय वस्व एक इत्। स्तोता मे गोषखा स्यात्॥१॥
हे इन्द्रदेव ! तिमीजस्तै समस्त ऐश्वर्यका स्वामी म भएँ भने मेरा पनि स्तोता होलान्।

शिक्षेयमस्मै दित्सेयं शचीपते मनीषिणे। यदहं गोपतिः स्याम्॥२॥
हे इन्द्रदेव ! वाणी र इन्द्रियको स्वामी बनेर मनीषिलाई दान, शिक्षा र सहायता दिऊँ।

धेनुष्ट इन्द्र सूनृता यजमानाय सुन्वते। गामश्वं पिप्युषी दुहे॥३॥
हे इन्द्रदेव ! तिम्रा स्तुतिले गाईको रूप धारण गर्दछ। सोमयज्ञ गर्ने यजमानलाई पोषित गराउँदै इच्छा लागेको पदार्थ उपलब्ध गराउँछ।

न ते वर्तास्ति राधस इन्द्र देवो न मर्त्यः। यद्दित्ससि स्तुतो मघम्॥४॥
हे इन्द्रदेव ! तिमी स्तुत्य भएर याजकलाई धन प्रदान गर्न चाहन्छौ। तिमीलाई धन दिनबाट देवता या मानव कसैले पनि रोक्न सक्दैन।

यज्ञ इन्द्रमवर्धयद्यद्भूमिं व्यवर्तयत्। चक्राण ओपशं दिवि॥५॥
यज्ञले इन्द्रदेवलाई खुसी पारेपछि उनले द्युलोकमा आवास बनाएर भूमि विस्तृत गराए।

वावृधानस्य ते वयं विश्वा धनानि जिग्युषः। ऊतिमिन्द्रा वृणीमहे॥६॥
हे इन्द्रदेव ! हामी तिम्रो दिव्य संरक्षण पाउन चाहन्छौं। त्यसैबाट हामी समृद्ध भएर शत्रुको समस्त ऐश्वर्य जित्न सक्छौं।

व्य१न्तरिक्षमतिरन्मदे सोमस्य रोचना। इन्द्रो यदभिनद्वलम् ॥७॥

सोमपानले उमङ्ग उत्पन्न भएपछि इन्द्रदेवले बलवान् मेघलाई विदीर्ण गराए। त्यसै बेला उनले प्रकाशवान् आकाश पनि विस्तृत गराए।

उदगा आजदङ्गिरोभ्य आविष्कृण्वन्गुहा सतीः। अर्वाञ्चं नुनुदे वलम् ॥८॥

सूर्यरूपी हे इन्द्रदेव ! तिमीले गुफामा रहेको किरण प्रकट गरेर त्यसलाई देहधारीसम्म पुऱ्यायौ। त्यसलाई रोकिदिने असुरलाई उँधो मुन्टो लगाउँदै भाग्ने बनायौ।

इन्द्रेण रोचना दिवो दृढहानि च। स्थिराणि न पराणुदे ॥९॥

अन्तरिक्षमा रहेका सबै प्रकाशवान् नक्षत्रलाई इन्द्रदेवले बलियो र समृद्ध बनाए। ती नक्षत्रलाई कसैले पनि उनका स्थानबाट हल्लाउन सक्दैन।

अपामूर्मिर्मदन्निव स्तोम इन्द्राजिरायते। वि ते मदा अराजिषुः ॥१०॥

हे इन्द्रदेव ! तिमीलाई प्रार्थना गर्दा समुद्रमा लहर उर्लिएझैं चाँडै तिम्रो उत्साह बढ्छ।

त्वं हि स्तोमवर्धन इन्द्रास्युक्थवर्धनः। स्तोतृणामुत भद्रकृत् ॥११॥

हे स्तुतिकर्ताका हितकारी इन्द्रदेव ! तिमी स्तोत्र र स्तुतिले सन्तुष्ट र समृद्ध हुन्छौ।

इन्द्रमित्केशिना हरी सोमपेयाय वक्षतः। उप यज्ञं सुराधसम् ॥१२॥

लामो जगर भएका दुवै अश्वले श्रेष्ठ ऐश्वर्यसम्पन्न इन्द्रदेवलाई सोम पिउनका लागि यज्ञमण्डपका नजिकै लिएर जान्छन्।

अपां फेनेन नमुचेः शिर इन्द्रोदवर्तयः। विश्वा यदजयः स्पृधः ॥१३॥

प्रतिस्पर्धा गर्ने सबै असुरलाई पराजित गरिसकेपछि इन्द्रदेवले नमुचीको शिर फिँज उठेका पानीमा हालेर नष्ट पारिदिए।

मायाभिरुत्सिसृप्सत इन्द्र द्यामारुरुक्षतः। अव दस्यूँरधूनुथाः ॥१४॥

मायाले सर्वत्र विद्यमान हे इन्द्रदेव ! तिमीले द्युलोकमा बढ्ने दस्यु तलतिर खसाल्यौ।

असुन्वामिन्द्र संसदं विषूचीं व्यनाशयः। सोमपा उत्तरो भवन् ॥१५॥

हे सोमपान गर्ने महान् इन्द्रदेव ! सोमयज्ञ नगर्ने मानिसको सङ्गठन आपसी लडाइँले नष्ट गराऊ।

[सूक्त – १५]

ऋषि – गोषूक्ति, अश्व सूक्ति काण्वायन। देवता – इन्द्र। छन्द – उष्णिक्।

तम्वभि प्र गायत पुरुहूतं पुरुष्टुतम्। इन्द्रं गीर्भिस्तविषमा विवासत ॥१॥

हे स्तोताहरू हो ! अनेकौं यजमानले स्तुतिपूर्वक बोलाउने गरेका प्रशंसायोग्य महान् इन्द्रदेवलाई विभिन्न स्तोत्रले स्तुति गर।

यस्य द्विबर्हसो बृहत्सहो दाधार रोदसी। गिरीँरज्राँ अपः स्वर्वृषत्वना ॥२॥

इन्द्रदेवका शक्तिले शीघ्रगामी बादल र गतिमान जल धारण गर्दछ। उनको महान् बल द्युलोक र पृथ्वीलोकले ग्रहण गर्दछन्।

स राजसि पुरुष्टुतँ एको वृत्राणि जिघ्नसे। इन्द्र जैत्रा श्रवस्या च यन्तवे ॥३॥

धेरै तिरबाट प्रशंसित हे इन्द्रदेव ! तिमी आफ्नै दिव्य कान्तिले आलोकित हुन्छौ। तिमी ऐश्वर्य र कीर्ति प्राप्त गर्नका लागि एक्लै नै वृत्रासुर वध गर्दछौ।

तं ते मदं गृणीमसि वृषणं पृत्सु सासहिम्। उ लोककृत्नुमद्रिवो हरिश्रियम् ॥४

हे हातमा वज्र लिने इन्द्रदेव ! शक्तिशाली, सङ्ग्राममा शत्रु पराजित गर्ने, कल्याणकारी र अश्वद्वारा सेवा गरिने हुनाले तिम्रा उत्साहको हामी प्रशंसा गर्दछौं।

येन ज्योतींष्यायवे मनवे च विवेदिथ। मन्दानो अस्य बर्हिषो वि राजसि ॥५॥

हे इन्द्रदेव ! तिमीले दीर्घजीवी मानिसको हितका लागि ज्योतिर्मानलाई प्रकाशित गरेका छौ। तिमी यस यज्ञका वेदीमा विराजमान हुन्छौ।

तदद्या चित्त उक्थिनोऽनु ष्टुवन्ति पूर्वथा। वृषपत्नीरपो जया दिवेदिवे ॥६॥

हे इन्द्रदेव ! सनातन स्तुतिकर्ता आज पनि तिम्रै बलको स्तुति गर्दछन्। वर्षा गराउने पर्जन्यको जल तिमी प्रतिदिन मुक्त गर र समयअनुसार वर्षा गराऊ।

**तव त्यदिन्द्रियं बृहत्तव शुष्ममुत क्रतुम्। वज्रं शिशाति धिषणा वरेण्यम् ॥७॥**
हे इन्द्रदेव ! हाम्रा प्रार्थनाले तिम्रो शौर्य, सामर्थ्य, कुशलता, पराक्रम र श्रेष्ठ वज्रलाई तेजस्वी बनाउँछ।

**तव द्यौरिन्द्र पौंस्यं पृथिवी वर्धति श्रवः। त्वामापः पर्वतासश्च हिन्विरे ॥८॥**
हे इन्द्रदेव ! अन्तरिक्षमा तिम्रो शक्तिसामर्थ्य र पृथ्वीमा यशस्वी स्वरूप विस्तार हुन्छ। जलप्रवाह र पर्वत तिमीलाई आफ्नो अधिपति मान्दै नजिक पुग्दछन्।

**त्वां विष्णुर्बृहन् क्षयो मित्रो गृणाति वरुणः। त्वां शर्धो मदत्यनु मारुतम् ॥९॥**
हे इन्द्रदेव ! महान् आश्रयदाता मानेर विष्णु, मित्र र वरुण आदि देवताले तिम्रो स्तुति गाउँछन्। मरुत्‌हरूका बलले तिमी हर्षित हुन्छौ।

**त्वं वृषा जनानां मंहिष्ठ इन्द्र जज्ञिषे। सत्रा विश्वा स्वपत्यानि दधिषे ॥१०॥**
हे शक्तिशाली इन्द्रदेव ! देवताका समुदायमा सबैभन्दा महान् मानिने तिमीले श्रेष्ठ सन्ततिसहित समस्त ऐश्वर्य धारण गरेका छौ।

**सत्रा त्वं पुरुष्टुतँ एको वृत्राणि तोशसे। नान्य इन्द्रात् करणं भूय इन्वति ॥११॥**
हे बहुप्रशंसित इन्द्रदेव ! तिमी एक्लै शत्रु वध गर्दछौ। तिमीबाहेक कुनै अर्को व्यक्तिले यस्तो महान् कार्य गर्न सक्दैन।

**यदिन्द्र मन्मशस्त्वा नाना हवन्त ऊतये। अस्माकेभिर्नृभिरत्रा स्वर्जय ॥१२॥**
हे इन्द्रदेव ! सुरक्षाका लागि मानिसले स्तुति गर्दै तिमीलाई आह्वान गर्दा युद्धका क्षणमा राजासँग रहेर हाम्रा शत्रु परास्त गर।

**अरं क्षयाय नो महे विश्वा रूपाण्याविशन्। इन्द्रं जैत्राय हर्षया शचीपतिम् ॥१३**
हे याजकहरू हो ! विजय र विशाल आवासका प्राप्त गर्न समस्त रूपले शक्तिशाली इन्द्रदेवलाई हर्षित गरौं।

## [सूक्त – १६]

**ऋषि** – इरिम्बिठि काण्व। **देवता** – इन्द्र। **छन्द** – गायत्री।

**प्र सम्राजं चर्षणीनामिन्द्रं स्तोता नव्यं गीर्भिः। नरं नृषाहं मंहिष्ठम् ॥१॥**
हे स्तोताहरू हो ! मानिसमध्ये राम्रो प्रतिष्ठा पाएका, स्तुति गर्न योग्य, शत्रुजयी नेतृत्व क्षमताले सम्पन्न इन्द्रदेवको स्तुति गर।

**यस्मिन्नुक्थानि रण्यन्ति विश्वानि च श्रवस्या। अपामवो न समुद्रे ॥२॥**
समस्त स्तुति र कीर्तिले इन्द्रदेव समुद्रको जलतरङ्गजस्तै सुशोभित हुन्छन्।

**तं सुष्टुत्या विवासे ज्येष्ठराजं भरे कृत्नुम्। महो वाजिनं सनिभ्यः ॥३॥**
रणक्षेत्रमा महान् पुरुषार्थ गर्ने, शक्तिशाली, महान् शासक इन्द्रदेवलाई हामी महान् धन प्राप्त गर्नका लागि श्रेष्ठ वचनले स्तुति गर्दछौं।

**यस्यानूना गभीरा मदा उरवस्तरुत्राः। हर्षमन्तः शूरसातौ ॥४॥**
हे अत्यन्त विशाल र श्रेष्ठ इन्द्रदेव ! तिम्रा पराक्रमको हामी प्रशंसा गर्दछौं। रणक्षेत्रमा अत्यधिक उत्साहित भएर तिमी शत्रु विनाश गर्दछौ।

**तमिद्धनेषु हितेष्वधिवाकाय हवन्ते। येषामिन्द्रस्ते जयन्ति ॥५॥**
युद्ध प्रारम्भ भएपछि आफ्ना पक्षमा लड्नका लागि याजकहरू इन्द्रदेवलाई आह्वान गर्दछन्। किनभने इन्द्रदेव रहेका पक्षले नै विजयश्री पाउँछ।

**तमिच्च्यौत्नैरार्यन्ति तं कृतेभिश्चर्षणयः। एष इन्द्रो वरिवस्कृत् ॥६॥**
आफ्ना महान् स्तोत्र र कार्यले मानिसहरू इन्द्रदेवको अनुग्रह प्राप्त गर्न सक्छन्। इन्द्रदेव ऐश्वर्य प्रदान गर्दछन्।

**इन्द्रो ब्रह्मेन्द्र ऋषिरिन्द्रः पुरू पुरुहूतः। महान्महीभिः शचिभिः ॥७॥**
आत्मज्ञानी ऋषिजस्ता महान् इन्द्रदेवलाई विशाल शक्तिका कारण अनेकौं साधक सहायता प्राप्तिका निम्ति बोलाउँछन्।

**स स्तोम्यः स हव्यः सत्यः सत्वा तुविकूर्मिः। एकश्चित्सन्नभिभूतिः ॥८॥**
प्रार्थनीय, आवाहनीय, अविनाशी र शक्तिशाली इन्द्रदेव शीघ्र कार्य गर्दछन्। उनी एक्लै भए पनि शत्रुलाई पराजित गर्दछन्।

**तमर्केभिस्तं सामभिस्तं गायत्रैश्चर्षणयः। इन्द्रं वर्धन्ति क्षितयः ॥९॥**
ऋचा र गाउन योग्य स्तोत्रसँगै गायत्री छन्द आदिका मन्त्रले विद्वान् पुरुष इन्द्रदेवलाई समृद्ध गराउँछन्।

**प्रणेतारं वस्यो अच्छा कर्तारं ज्योतिः समत्सु। सासह्वांसं युधामित्रान् ॥१०॥**
धनवान्बाट ऐश्वर्य प्रदान गराउने, सङ्ग्राममा शौर्य देखाउने र आफ्ना शस्त्रास्त्रले शत्रु परास्त गराउने इन्द्रदेवको प्रशंसा सबै मानिसले गर्दछन्।

**स नः पप्रिः पारयाति स्वस्ति नावा पुरुहूतः। इन्द्रो विश्वा अति द्विषः ॥११॥**
मानिसको इच्छा पूरा गराउने, इन्द्रदेवलाई सबैले बोलाउँछन्। उनी रक्षणसाधनरूपी आफ्ना नौकाले समस्त शत्रुबाट हामीलाई पार लगाउँछन्।

**स त्वं न इन्द्र वाजेभिर्दशस्या च गातुया च। अच्छा च नः सुम्नं नेषि ॥१२॥**
हे इन्द्रदेव ! हामीलाई शक्ति र धनधान्यले परिपूर्ण ऐश्वर्य प्रदान गर। श्रेष्ठ मार्ग प्रदर्शित गर्दै पूर्ण सुखी बनाऊ।

## [सूक्त – १७]

**ऋषि – इरिम्बिठि काण्व। देवता – इन्द्र। छन्द – गायत्री प्रगाथ बृहती।**

**आ याहि सुषुमा हि त इन्द्र सोमं पिबा इमम्। एदं बर्हिः सदो मम ॥१॥**
हे इन्द्रदेव ! हाम्रा यज्ञमा आऊ, सोमरस तयार गरेर तिम्रा लागि चढाएका छौँ। पान गरेर उच्च आसनमा विराजमान होऊ।

**आ त्वा ब्रह्मयुजा हरी वहतामिन्द्र केशिना। उप ब्रह्माणि नः शृणु ॥२॥**
हे इन्द्रदेव ! मन्त्र सुन्नासाथ रथमा नारिने श्रेष्ठ अश्वका माध्यमबाट तिमी नजिकै आऊ र हाम्रा प्रार्थनामा ध्यान देऊ।

**ब्रह्माणस्त्वा वयं युजा सोमपामिन्द्र सोमिनः। सुतावन्तो हवामहे ॥३॥**
हे इन्द्रदेव ! ब्रह्मनिष्ठ सोमयज्ञकर्ता साधक सोमपानका लागि तिमीलाई आह्वान गर्छन्।

**आ नो याहि सुतावतोऽस्माकं सुष्टुतीरुप। पिबा सु शिप्रिन्नन्धसः ॥४॥**
श्रेष्ठ मुकुट धारण गर्ने हे इन्द्रदेव ! सोमयज्ञ गर्ने याजक श्रेष्ठ प्रार्थनाले तिमीलाई आफ्ना नजिकै बोलाउँछन्। त्यसैले तिमी आएर सोमरस पान गर।

**आ ते सिञ्चामि कुक्ष्योरनु गात्रा वि धावतु। गृभाय जिह्वया मधु ॥५॥**
हे इन्द्रदेव ! हामी तिम्रो पेट सोमरसले पूर्ण गराउँछौँ। तिम्रा शरीरभरि सोम सञ्चरित होस्। तिमी यस मिठो सोमरसलाई जिब्राले स्वाद मानेर सेवन गर।

**स्वादुष्टे अस्तु संसुदे मधुमान्तन्वे३तव। सोमः शमस्तु ते हृदे ॥६॥**
हे श्रेष्ठ ऐश्वर्य प्रदान गर्ने इन्द्रदेव ! मह मिसाएको सोमरस तिमीलाई स्वादिलो लागला। तिम्रो शरीर र हृदयका लागि यसले आनन्द उत्पन्न गराउन सकोस्।

**अयमु त्वा विचर्षणे जनीरिवाभि संवृतः। प्र सोम इन्द्र सर्पतु ॥७॥**
हे दूरदर्शी इन्द्रदेव ! सेतो वस्त्र धारण गर्ने स्त्रीले सात्विकताको अभिव्यक्ति गरेझैं गाईको दुधमा मिसाएको सोमरस तेजयुक्त भएर तिमीलाई प्राप्त होस्।

**तुविग्रीवो वपोदरः सुबाहुरन्धसो मदे। इन्द्रो वृत्राणि जिघ्नते ॥८॥**
सुन्दर गलो, विशाल पेट र बलिया पाखुरा भएका इन्द्रदेवले सोमरस पान गरेर उत्साह प्राप्त गरेपछि शत्रु वध गर्दछन्।

**इन्द्र प्रेहि पुरस्त्वं विश्वस्येशान ओजसा। वृत्राणि वृत्रहञ्जहि ॥९॥**
हे संसारमा शासन गर्ने ओजस्वी इन्द्रदेव ! अगुवा भएर जाऊ। हे वृत्रहन्ता इन्द्रदेव ! तिमी शत्रु संहार गर्दछौ।

दीर्घस्ते अस्त्वङ्कुशो येना वसु प्रयच्छसि। यजमानाय सुन्वते ॥१०॥

हे इन्द्रदेव ! सोमयाग गर्ने याजकलाई ऐश्वर्य वा आवास प्रदान गर्ने तिम्रो अङ्कुश अत्यधिक विशाल छ।

अयं त इन्द्र सोमो निपूतो अधि बर्हिषि। एहीमस्य द्रवा पिब ॥११॥

हे इन्द्रदेव ! वेदिकामाथि सुशोभित, आसनमा स्थापित, शोधित सोमरस तिम्रा लागि प्रस्तुत छ, चाँडै आएर पान गर।

शाचिगो शाचिपूजनायं रणाय ते सुतः। आखण्डल प्र हूयसे ॥१२॥

शक्तिसम्पन्न, शत्रुनाशक, सामर्थ्यवान्, तेजस्वी, पूज्य हे इन्द्रदेव ! ज्ञान वृद्धिका लागि सोमरस तयार गरिएको छ। हामी तिमीलाई आह्वान गर्दछौं।

यस्ते शृङ्गवृषो नपात् प्रणपात्कुण्डपाय्यः। न्यस्मिन्दध्र आ मनः ॥१३॥

हे तेजस्वी इन्द्रदेव ! सरलताले पान गर्न योग्य सोमका लागि यस कुण्ड आकारमा रहेका यज्ञतर्फ तिमी उन्मुख होऊ।

वास्तोष्पते ध्रुवा स्थूणांसत्रं सोम्यानाम्।
द्रप्सो भेत्ता पुरां शश्वतीनामिन्द्रो मुनीनां सखा ॥१४॥

हे गृहस्वामी ! घरका स्तम्भ बलिया होऊन्, सोमयज्ञ गर्ने याजकलाई शरीर रक्षा गर्ने शक्ति प्राप्त होस्। राक्षसका अनेकौं सहर उजाड्दै सोमपान गर्ने इन्द्रदेव मुनिहरूका सखा होऊन्।

पृदाकुसानुर्यजतो गवेषण एकः सन्नभि भूयसः।
भूर्णिमश्वं नयत्तुजा पुरो गृभेन्द्र सोमस्य पीतये ॥१५॥

विशाल शिर भएका, गाईको खोजी गर्ने, पूजनीय इन्द्रदेव एक्लै समस्त शत्रु परास्त गर्छन्। सर्वव्यापी र पालनपोषण गर्ने इन्द्रदेवलाई सोमपानका लागि आह्वान गरौं।

## [सूक्त - १८]

ऋषि - इरिम्बिठि काण्व। देवता - अश्विनीकुमार अग्नि सूर्य अनिल। छन्द - उष्णिक्।

इदं ह नूनमेषां सुम्नं भिक्षेत मर्त्यः। आदित्यानामपूर्व्यं सवीमनि ॥१॥

पहिले कसैलाई प्राप्त हुन नसकेको सुख आदित्यका नियन्त्रणमा चल्ने मानिसले निश्चय रूपले प्राप्त गर्दछन्।

अनर्वाणो ह्येषां पन्था आदित्यानाम्। अदब्धाः सन्ति पायवः सुगेवृधः ॥२॥

हिंसा र छलछामविनाका आदित्यको मार्ग अनुसरण गर्ने प्राणीको भरणपोषण हुन्छ। तिनले जीवनमा हर्षोल्लास वृद्धि गर्न सक्दछन्।

तत्सु नः सविता भगो वरुणो मित्रो अर्यमा। शर्म यच्छन्तु सप्रथो यदीमहे ॥३॥

हामीले कामना गरेको सुखऐश्वर्य सविता, वरुण, मित्र, भग र अर्यमाले प्रदान गरुन्।

देवेभिर्देव्यदितेऽरिष्टभर्मन्ना गहि। स्मत्सूरिभिः पुरुप्रिये सुशर्मभिः ॥४॥

श्रेष्ठ गुणसम्पन्न अहिंसाको पोषण प्रदान गर्ने, अनेकौंकी प्रिय हे अदिति देवी ! तिमी ज्ञानी, देवता र श्रेष्ठ सुखसँगै हामीकहाँ आऊ।

ते हि पुत्रासो अदितेर्विदुर्द्वेषांसि योतवे। अंहोश्चिदुरुचक्रयोऽनेहसः ॥५॥

महान् कार्य गर्ने र दोषबाट मुक्त अदिति माताका पुत्रले द्वेष गर्ने शत्रु र अत्याचारीलाई निश्चित रूपले भगाउन जान्दछन्। उनले पापी आचरणबाट मुक्त गर्न जान्दछन्।

अदितिर्नो दिवा पशुमदितिर्नक्तमद्वयाः। अदितिः पात्वंहसः सदावृधा ॥६॥

निरन्तर पशुको सुरक्षा गर्दै आफ्ना समस्त रक्षणसाधनले माता अदितिले हामीलाई सम्पूर्ण खराबीबाट बचाऊन्।

उत स्या नो दिवा मतिरदितिरूत्या गमत्। सा शन्ताति मयस्करदप स्रिधः ॥७

हे देवताकी माता अदिति ! पूर्ण रक्षासाधनसँगै आऊ। शत्रु हनन गर र हामीलाई सुख र शान्ति प्रदान गर।

उत त्या दैव्या भिषजा शं नः करतो अश्विना। युयुयातामितो रपो अप स्रिधः ॥

देवताका चिकित्सक अश्विनीकुमारले पाप र शत्रु पर हटाएर हर्ष प्रदान गरुन्।

शमग्निरग्निभिः करच्छं नस्तपतु सूर्यः। शं वातो वात्वरपा अप स्रिधः ॥९॥
अग्निदेव आफ्ना ज्वालाले, सूर्यदेव आफ्ना प्रखर प्रकाशले र वायुदेव आफ्ना दोषमुक्त प्रवाहले हाम्रो शारीरिक शत्रु विनाश गरेर हामीलाई हर्ष प्रदान गरुन्।

अपामीवामप स्रिधमप सेधत दुर्मतिम्। आदित्यासो युयोतना नो अंहसः ॥१०
हे आदित्यहरू हो ! रोग, शत्रु, पाप र दुर्बुद्धिका दुष्प्रभाव हामीदेखि पर राख।

युयोता शरुमस्मदाँ आदित्यास उतामतिम्। ऋधग् द्वेषः कृणुत विश्ववेदसः॥
हे आदित्यहरू हो ! दुर्बुद्धि र हाम्रा शत्रु हामीदेखि पर भगाओ। हे समस्त पदार्थको ज्ञान भएका देवताहरू हो ! तिमीहरू द्वेष गर्नेलाई पनि हामीदेखि पर भगाओ।

तत्सु नः शर्म यच्छतादित्या यन्मुमोचति। एनस्वन्तं चिदेनसः सुदानवः ॥१२॥
हे श्रेष्ठ दानी आदित्यहरू हो ! पापीलाई दुष्कर्म गर्नबाट जोगाउने ज्ञान प्रदान गर।

यो नः कश्चिद्रिरिक्षति रक्षस्त्वेन मर्त्यः। स्वैः ष एवै रिरिषीष्ट युर्जनः ॥१३॥
राक्षसी प्रवृत्ति धारण गरेर हाम्रो हत्या गर्ने प्रयास गर्ने मानिसहरू हामीदेखि पर पुगेर आफ्नै दुष्कर्मले नाश होऊन्।

समित्तमघमश्नवद्दुःशंसं मर्त्यं रिपुम्। यो अस्मत्रा दुर्हणावां उप द्वयुः ॥१४॥
हामीसित कुटिलतापूर्ण व्यवहार गर्ने, हाम्रो हत्याको प्रयास गर्ने, पापी र शत्रु आआफ्नै पापले नाश होऊन्।

पाकत्रा स्थन देवा हृत्सु जानीथ मर्त्यम्। उप द्वयुं चाद्वयुं च वसवः ॥१५॥
सबैलाई पालन गर्ने हे आदित्य हो ! छल गर्ने र छलरहित व्यक्तिलाई तिमीहरू आफ्ना अन्तःकरणबाटै चिन्दछौ। अतः पवित्रता रुचाउने व्यक्तिकै नजिक रहिरहन्छौ।

आ शर्म पर्वतानामोतापां वृणीमहे। द्यावाक्षामारे अस्मद्रपस्कृतम् ॥१६॥
पर्वत र जलका बीचमा रहेको सुख प्राप्त गर्ने कामना हामी गर्दछौं। हे द्यावापृथिवी ! हाम्रो पाप हामीदेखि पर भगाओ।

ते नो भद्रेण शर्मणा युष्माकं नावा वसवः। अति विश्वानि दुरिता पिपर्तन ॥१७
सबैलाई आवास प्रदान गर्ने हे आदित्य हो ! तिमीहरू आफ्नो हितकारी र सुखप्रदायक नौकाले समस्त खराबीबाट हामीलाई पार लगाओ।

तुचे तनाय तत्सु नो द्राघीय आयुर्जीवसे। आदित्यासः सुमहसः कृणोतन ॥१८
हे महान् आदित्य हो ! हाम्रा पुत्रपौत्रहरूलाई लामो आयु प्रदान गर्ने कृपा गर।

यज्ञो हीडो वो अन्तर आदित्या अस्ति मृडत। युष्मे इद्वो अपि ष्मसि सजात्ये॥
हे आदित्य हो ! तिमीहरू जुन यज्ञमा पुग्ने इच्छा गर्दछौ, त्यो नजिकै सम्पन्न हुँदै छ। तिमीहरूको मैत्री पाएर हामी सधैं तिमीहरूकै हुनेछौं।

बृहद्वरूथं मरुतां देवं त्रातारमश्विना। मित्रमीमहे वरुणं स्वस्तये॥२०॥
शीत, ताप आदि मुक्त कल्याणकारी आवासको कामनाले मरुत्हरूका संरक्षक इन्द्रदेव, अश्विनीकुमार, मित्र, वरुण र गृहपति वास्तोष्पतिदेवलाई हामी आह्वान गर्दछौं।

अनेहो मित्रार्यमन्नृवद्वरुण शंस्यम्। त्रिवरूथं मरुतो यन्त नश्छर्दिः ॥२१॥
हे मित्र, अर्यमा, वरुण र महान् मरुत्हरू हो ! शीत, ताप र वर्षारहित तीन खण्ड भएको श्रेष्ठ आवास हामीलाई प्रदान गर।

ये चिद्धि मृत्युबन्धव आदित्या मनवः स्मसि। प्र सू न आयुर्जीवसे तिरेतन॥
हे आदित्य हो ! मृत्युका मुखमा जान लागेका मानिसलाई लामो आयु प्रदान गर।

[सूक्त – १९]

ऋषि – सोभरि काण्व। देवता – अग्नि आदित्यगण। छन्द – प्रगाथ द्विपदा विराट।

तं गूर्धया स्वर्णरं देवासो देवमरतिं दधन्विरे। देवत्रा हव्यमोहिरे ॥१॥
हे स्तोता हो ! स्वर्गमा रहेका देवताका लागि हवि पुर्‍याउने अग्निदेवको स्तुति गर। याजकहरू स्तुति गर्दछन् र देवतालाई हव्य प्रदान गर्दछन्।

विभूतरातिं विप्र चित्रशोचिषमग्निमीडिष्व यन्तुरम्।
अस्य मेधस्य सोम्यस्य सोभरे प्रेमध्वराय पूर्व्यम् ॥२॥

हे ऋषिहरू हो ! यज्ञको सफलताका लागि प्रचुर वैभव प्रदान गर्ने, अति ओजस्वी, यस श्रेष्ठ सोमयज्ञका नियामक, चिरन्तन अग्निदेवलाई हामी वन्दना गर्दछौं।

यजिष्ठं त्वा ववृमहे देवं देवत्रा होतारममर्त्यम्। अस्य यज्ञस्य सुक्रतुम् ॥३॥

हे श्रेष्ठ याज्ञिक अग्निदेव ! यो यज्ञ राम्ररी सम्पन्न गराऊ, हामी स्तुति गर्दछौं।

उर्जो नपातं सुभगं सुदीदितिमग्निं श्रेष्ठशोचिषम्।
स नो मित्रस्य वरुणस्य सो अपामा सुम्नं यक्षते दिवि ॥४॥

उर्जा पतन नहुने, सबै ऐश्वर्यले सम्पन्न, श्रेष्ठ दीप्ति एवं कान्तियुक्त अग्निदेवलाई हामी स्तुति गर्दछौं। उनले यस यज्ञमा मित्र, वरुण एवं जलदेवतालाई सन्तुष्ट गर्नका लागि यजन कार्य सम्पन्न गरुन्।

यः समिधा य आहुती यो वेदेन ददाश मर्तो अग्नये। यो नमसा स्वध्वरः ॥५॥

अन्न, समिधा, हविष्य र ज्ञानले अग्निदेवलाई हवि प्रदान गर्ने र हिंसा नगर्ने मानिस श्रेष्ठ सुखले सम्पन्न हुन्छन्।

तस्येदर्वन्तो रंहयन्त आशवस्तस्य द्युम्नितमं यशः।
न तमंहो देवकृतं कुतश्चन न मर्त्यकृतं नशत् ॥६॥

अग्निदेवका निम्ति यज्ञ गर्ने साधक द्रुतगामी अश्वका अधिपति र उज्ज्वल कीर्तिले सम्पन्न हुन्छन्। देवता र मानिसप्रति भुलवश पाप गरेर उनीहरू नष्ट हुँदैनन्।

स्वग्नयो वो अग्निभिः स्याम सूनो सहस ऊर्जां पते। सुवीरस्त्वमस्मयुः ॥७॥

शौर्यका पुत्र र बलका स्वामी हे अग्निदेव ! तिम्रो गार्हपत्य आदि स्वरूपले हामी श्रेष्ठ अग्निद्वारा सम्पन्न होऔं। मानवलाई श्रेष्ठ पराक्रमी पुत्र प्रदान गर।

प्रशंसमानो अतिथिर्न मित्रियोऽग्नी रथो न वेद्यः।
त्वे क्षेमासो अपि सन्ति साधवस्त्वं राजा रयीणाम् ॥८॥

हे अतिथिजस्तै प्रशंसनीय, रथजस्तै गमनीय र आफन्तको कल्याण गर्ने अग्निदेव ! तिमीसित आश्रित रहेका उपासकको हित हुन्छ र उनीहरू ऐश्वर्यका स्वामी बन्दछन्।

सो अद्धा दाश्वध्वरोऽग्ने मर्तः सुभग स प्रशंस्यः। स धीभिरस्तु सनिता ॥९॥

हे अग्निदेव ! यज्ञ आदि कर्म गर्ने दानी व्यक्तिले सत्यका परिणाम प्राप्त गर्दछन्। श्रेष्ठ सम्पत्तिले सम्पन्न हे अग्निदेव ! तिमी स्तुति गर्न योग्य छौ। तिमी आफ्ना श्रेष्ठ ज्ञानद्वारा हामीलाई सुरक्षा गर।

यस्य त्वमूर्ध्वो अध्वराय तिष्ठसि क्षयद्वीरः स साधते।
सो अर्वद्भिः सनिता स विपन्युभिः स शूरैः सनिता कृतम् ॥१०॥

हे अग्निदेव ! तिमी जुन याजकका यज्ञमा आउन सहमत हुन्छौ, त्यो पुरुष पराक्रमी सन्तान, अश्व र ज्ञानले सम्पन्न हुँदै कार्य पूरा गर्दछ। ऊ पराक्रमी र पूजनीय हुन्छ।

यस्याग्निर्वपुर्गृहे स्तोमं चनो दधीत विश्ववार्यः। हव्या वा वेविषद्विषः ॥११॥

समस्त मानिसका लागि वरणीय अग्निदेवले याजकका घरमा जुन स्तोत्र र हव्य ग्रहण गर्दछन्, त्यो हवि आदि देवतालाई प्राप्त हुन्छ।

विप्रस्य वा स्तुवतः सहसो यहो मक्षूतमस्य रातिषु।
अवोदेवमुपरिमर्त्यं कृधि वसो विविदुषो वचः ॥१२॥

पराक्रमका पुत्र र सबैलाई पालन गर्ने हे अग्निदेव ! हव्य प्रदान गर्नमा फुर्तिला, कुशल र प्रार्थना गर्ने ज्ञानी मानिसको प्रार्थनालाई तिमीले देवताको भन्दा तल र मानिसको भन्दा माथिको स्थानमा राखिदेऊ।

यो अग्निं हव्यदातिभिर्नमोभिर्वा सुदक्षमाविवासति। गिरा वाजिरशोचिषम् ॥

हवि र स्तुतिले श्रेष्ठ अग्निदेवको उपासना गर्ने र आफ्ना स्तुति वचनले उनको सेवा गर्ने याजक ऐश्वर्य आदिले सम्पन्न हुन्छन्।

समिधा यो निशिती दाशददितिं धामभिरस्य मर्त्यः ।
विश्वेत्स धीभिः सुभगो जनाँ अति द्युम्नैरुद्न इव तारिषत् ॥१४॥

एकाग्र चित्त भएर भक्तिपूर्वक अखण्ड अग्निदेवको आराधना गर्ने साधकहरू जलभैँ ओज, बल र श्रेष्ठ कर्मद्वारा सम्पूर्ण मानिसभन्दा माथि उठ्दछन् ।

तदग्ने द्युम्नमा भर यत्सासहत्सदने कं चिदत्रिणम् । मन्युं जनस्य दूढ्यः ॥१५॥

हे अग्निदेव ! हामीलाई प्रखर तेज प्रदान गर । त्यस तेजले यज्ञमा आउने दुष्टलाई नियन्त्रित गर्न सकियोस् र दुर्बुद्धिबाट उत्पन्न क्रोध हटाउन सकियोस् ।

येन चष्टे वरुणो मित्रो अर्यमा येन नासत्या भगः ।
वयं तत्ते शवसा गातुवित्तमा इन्द्रत्वोता विधेमहि ॥१६॥

हे अग्निदेव ! वरुण, मित्र र अर्यमा, अश्विनीकुमार, स्तुति योग्य इन्द्रदेव र अन्य सबै देवतालाई आलोकित गर्ने तिम्रा प्रकाशले हामीलाई सम्पन्न गरेर शक्तिशाली बनाऊ ।

ते घेदग्ने स्वाध्योऽ३ ये त्वा विप्र निदधिरे नृचक्षसम् । विप्रासो देव सुक्रतुम् ॥

ज्ञानी र तेजस्वी हे अग्निदेव ! आफ्ना समस्त कार्य सम्पादन गर्दै हृदयस्थलमा तिम्रो ध्यान गर्ने विद्वान् विप्रहरू नै सबैभन्दा महान् हुन्छन् ।

त इद्वेदिं सुभग त आहुतिं ते सोतुं चक्रिरे दिवि ।
त इद्वाजेभिर्जिग्युर्महद्धनं ये त्वे कामं न्येरिरे ॥१८॥

श्रेष्ठ सम्पत्तिवान् हे अग्निदेव ! तिमीबाट आफ्नो मनोकामना पूरा गराउन चाहने,हरू नै तिम्रा लागि वेदिका तयार गर्दछन्, हवि प्रदान गर्दछन् र सोमरस पेल्दछन् । यस्ता श्रेष्ठ कर्म गर्ने याजकका शौर्यले प्रचुर ऐश्वर्य प्राप्त गर्दछ ।

भद्रो नो अग्निराहुतो भद्रा रातिः सुभग भद्रो अध्वरः । भद्रा उत प्रशस्तयः ॥

हविले सन्तुष्ट भएका हे अग्निदेव ! हाम्रा लागि मङ्गलकारी होऊ । हे ऐश्वर्यशाली ! हामीलाई कल्याणकारी धन प्राप्त होस् र तिम्रो स्तुति हाम्रा लागि मङ्गलकारी होस् ।

भद्रं मनः कृणुष्व वृत्रतूर्ये येना समत्सु सासहः ।
अव स्थिरा तनुहि भूरि शर्धतां वनेमा ते अभिष्टिभिः ॥२०॥

हे अग्निदेव ! युद्धमा शत्रु परास्त गर्ने तिम्रो मङ्गलकारी मनोबल हामीलाई पनि प्रदान गर । हामी शत्रुको सेना परास्त गरेर इच्छित सुखले सम्पन्न हुँदै उपासना गर्न सकौँ ।

ईळे गिरा मनुर्हितं यं देवा दूतमरतिं न्येरिरे । यजिष्ठं हव्यवाहनम् ॥२१॥

सम्माननीय, हविवाहक, देवताका सन्देशवाहक र सम्पत्तिवान् अग्निदेवलाई ज्ञानी पुरुष आफ्ना प्रार्थनाले प्रदीप्त गराउँछन् । मानिसका लागि हितसाधक अग्निदेवलाई हामी वन्दना गर्दछौँ ।

तिग्मजम्भाय तरुणाय राजते प्रयो गायस्यग्नये ।
यः पिंशते सूनृताभिः सुवीर्यमग्निर्घृतेभिराहुतः ॥२२॥

हे मानिस हो ! खुसी भएर तीव्र ज्वालायुक्त आलोकवान् अग्निदेवको तिमीहरूले स्तुति गर्दछौ । श्रेष्ठ प्रार्थना र घिउको हवि पाएका अग्निले उत्तम पराक्रम प्रदान गर्दछन् ।

यदी घृतेभिराहुतो वाशीमग्निर्भरत उच्चाव च । असुर इव निर्णिजम् ॥२३॥

घिउको हवि ग्रहण गरेर द्यावापृथिवीमा ध्वनि गर्ने अग्निदेव महाप्रतापी सूर्यको जस्तो तेज प्रदर्शन गर्दछन् ।

यो हव्यान्यैरयता मनुर्हितो देव आसा सुगन्धिना ।
विवासते वार्याणि स्वध्वरो होता देवो अमर्त्यः ॥२४॥

मानिसको हित साधन गर्ने, महान् गुणले युक्त, आफ्ना मुखले देवताकहाँ आहुति पुऱ्याउने, अहिंसित कार्य गर्ने, देवतालाई आह्वान गर्ने, अजर र अमर अग्निदेवले हामीलाई श्रेष्ठ सम्पत्ति प्रदान गर्दछन् ।

यदग्ने मर्त्यस्त्वं स्यामहं मित्रमहो अमर्त्यः । सहसः सूनवाहुत ॥२५॥

शौर्यका पुत्रले आह्वान गर्ने र सखाजस्तै पूजनीय हे अग्निदेव ! तिम्रो साधना गरेर हामी मरणशील मानिसले तिम्रै जस्तो अमरता प्राप्त गरौँ ।

न त्वा रासीयाभिशस्तये वसो न पापत्वाय सन्त्य।
न मे स्तोतामतीवा न दुर्हितः स्यादग्ने न पापया ॥२६॥

सबैका पालनकर्ता हे अग्निदेव ! हामी कुनै घातक दुष्कर्मका लागि प्रार्थना नगरौं। हाम्रा प्रशंसक र शत्रु दुर्बुद्धिग्रस्त नहोऊन्। आफ्ना दुष्कर्मले हामीलाई दुःख नदियोस्।

पितुर्न पुत्रः सुभृतो दुरोण आ देवाँ एतु प्र णो हविः ॥२७॥

पिताले पुत्रको पालनपोषण गरेझैं मानिसले पोषण गरेका अग्निदेव पोषण गर्नमा योग्य छन्। उनी यज्ञमा प्रदान गरिएको आहुति ग्रहण गरेर देवतालाई पुऱ्याउँछन्।

तवाहमग्न ऊतिभिर्नेदिष्ठाभिः सचेय जोषमा वसो। सदा देवस्य मर्त्यः ॥२८॥

समस्त प्राणीका पालक हे अग्निदेव ! तिम्रा रक्षणसाधनले संरक्षित भएका मरणशील मानिसले तिम्रो कृपा प्राप्त गरौं।

तव क्रत्वा सनेयं तव रातिभिरग्ने तव प्रशस्तिभिः।
त्वामिदाहुः प्रमतिं वसो ममाग्ने हर्षस्व दातवे ॥२९॥

हे अग्निदेव ! हामी श्रेष्ठ कर्म, दान र प्रशस्तिले सम्पन्न बनौं। विद्वान्हरूले तिमीलाई श्रेष्ठ ज्ञानी भनेका छन्। हे अग्निदेव ! खुसी भएर आफ्ना कृपाको अनुदान देऊ।

प्र सो अग्ने तवोतिभिः सुवीराभिस्तिरते वाजभर्मभिः।
यस्य त्वं सख्यमावरः ॥३०॥

हे अग्निदेव ! तिमीले मित्र बनेर सहयोग गरेका स्तोताले श्रेष्ठ सन्तान, अन्न, बल आदि समृद्धिप्रदायक संरक्षण प्राप्त गर्दछन्।

तव द्रप्सो नीलवान्वाश ऋत्विय इन्धानः सिष्णवा ददे।
त्वं महीनामुषसामसि प्रियः क्षपो वस्तुषु राजसि ॥३१॥

हे सोमद्वारा सिञ्चित अग्निदेव ! प्रवाहमान शकटमा स्थापित, कामना योग्य, प्रकाशित, तेजस्वी सोम तिम्रा निम्ति प्राप्त हुन्छ। महान् उषाका प्रियजस्ता तिमी रातका समयमा बढी प्रकाशित हुन्छौ।

तमागन्म सोभरयः सहस्रमुष्कं स्वभिष्टिमवसे। सम्राजं त्रासदस्यवम् ॥३२॥

अत्यधिक तेजस्वी, श्रेष्ठ रूप र उत्कृष्ट इच्छाशक्ति भएका हे अग्निदेव ! तिमीलाई त्रसदस्युले प्रशंसा गर्दछन्। हे अग्निदेव ! सुरक्षाका लागि तिमीलाई वरण गर्दछौं।

यस्य ते अग्ने अन्ये अग्नय उपक्षितो वयाइव।
विपो न द्युम्ना नि युवे जनानां तव क्षत्राणि वर्धयन् ॥३३॥

अन्य अग्निले वृक्षको शाखाजस्ता बनेर तिमीबाट शक्ति प्राप्त गर्दछन्। हामी सामर्थ्य र ऐश्वर्यले तिमीलाई समृद्ध गरौं र स्वयं पनि सम्पत्ति तथा कीर्ति प्राप्त गरौं।

यमादित्यासो अद्रुहः पारं नयथ मर्त्यम्। मघोनां विश्वेषां सुदानवः ॥३४॥

द्रोहरहित तथा श्रेष्ठ दानी हे आदित्य हो ! जुन मानिसमाथि तिमीहरू प्रसन्न हुन्छौ, उसलाई समस्त विपद्‌बाट पार लगाउँछौ र अपार धन प्रदान गर्दछौ।

यूयं राजानः कं चिच्चर्षणीसहः क्षयन्तं मानुषाँ अनु।
वयं ते वो वरुण मित्रार्यमन्त्स्यामेदृतस्य रथ्यः ॥३५॥

शत्रु विनाश गर्ने हे आदित्य हो ! जुन मानिसले अहित गर्दछ, त्यसलाई प्राणदण्ड देओ। हे वरुण, मित्र र अर्यमादेव ! हामी तिमीहरूको यज्ञ सम्पन्न गर्दछौं।

अदान्मे पौरुकुत्स्यः पञ्चाशतं त्रसदस्युर्वधूनाम्। मंहिष्ठो अर्यः सत्पतिः ॥३६

पुरुकुत्सका पुत्र त्रसदस्यु श्रेष्ठ दानी र प्रार्थना गर्नेको रक्षा गर्दछन्। उनले मलाई पचास वधू प्रदान गरे।

उत मे प्रयियोर्वयियोः सुवास्त्वा अधि तुग्वनि।
तिसृणां सप्ततीनां श्यावः प्रणेता भुवद्वसुर्दियानां पतिः ॥३७॥

त्यसका अतिरिक्त सुवास्ता नदीका किनारमा दुई सय दस गाई र एउटा श्याम वर्णको साँढेका स्वामीले हामीलाई धन र वस्त्र आदि प्रदान गरे।

[सूक्त - २०]

ऋषि - सोभरि काण्व। देवता - मरुद्गण। छन्द - प्रगाथ।

**आ गन्ता मा रिषण्यत प्रस्थावानो माप स्थाता समन्यवः।**
**स्थिरा चिन्नमयिष्णवः ॥१॥**

गतिशील मरुत्हरू हानी नपुर्‍याईकन हाम्रा नजिक आऊन्। हे रिसाहा वीर हो ! तिमीहरू स्थिर र बलशाली शत्रुलाई झुकाउँछौ, हामीदेखि कहिल्यै पर नहोओ।

**वीडुपविभिर्मरुत ऋभुक्षण आ रुद्रासः सुदीतिभिः।**
**इषा नो अद्या गता पुरुस्पृहो यज्ञमा सोभरीयवः ॥२॥**

शत्रु रुवाउने वज्रधारी हे वीर मरुत्हरू हो ! आफ्नो कठोर वज्रसँगै यहाँ आओ। अनेकौंले रुचाउने र सोभरी ऋषिमाथि कृपादृष्टि राख्ने हे वीर हो ! तिमीहरू अन्नसहित हाम्रा यज्ञमा आओ।

**विद्या हि रुद्रियाणां शुष्ममुग्रं मरुतां शिमीवताम्। विष्णोरेषस्य मिढ्हुषाम् ॥३**

कामना पूरा गराउने र उद्यमी रुद्रपुत्र मरुत्हरूको उग्र पराक्रम हामीलाई थाहा छ।

**वि द्वीपानि पापतन्तिष्ठद्दुच्छुनोभे युजन्त रोदसी।**
**प्र धन्वान्यैरत शुभ्रखादयो यदेजथ स्वभानवः ॥४॥**

सेता गहना धारण गर्ने हे तेजस्वी मरुत्हरू हो ! शत्रुमाथि आक्रमण गर्नका लागि तिमीहरू अत्यन्त वेगले चल्दा वडावडा हात्ती धराशायी हुन्छन्। बोटबिरुवा सङ्कटग्रस्त हुन्छन्। आकाश र पृथ्वी काँप्दछन् अनि मरुस्थलको बालुवा चारैतिर उड्दछ।

**अच्युता चिद्वो अज्मन्ना नानदति पर्वतासो वनस्पतिः। भूमिर्यामेषु रेजते ॥५॥**

तिमीहरूले हमला गर्ने बेलामा आफ्नै स्थानमा स्थिर रहेका पर्वत र बोटबिरुवा चित्कार गर्न थाल्दछन्। तिमीहरूले शत्रुसेनामाथि आक्रमण गर्दा धर्ती पनि प्रकम्पित हुन्छ।

**अमाय वो मरुतो यातवे द्यौर्जिहीत उत्तरा बृहत्।**
**यत्रा नरो देदिशते तनूष्वा त्वक्षांसि बाह्वोजसः ॥६॥**

हे मरुत्हरू हो ! तिमीहरू आफ्ना पराक्रमले नायकका रूपमा प्रतिष्ठित भएर शक्ति एकीकृत गर्दै शत्रुको समूहमा प्रहार गर्दा आकाश पनि अझै फराकिलो हुँदै गएको हो कि जस्तो लाग्दछ।

**स्वधामनु श्रियं नरो महि त्वेषा अमवन्तो वृषप्सवः। वहन्ते अह्रुतप्सवः ॥७॥**

नायकजस्ता मरुत्हरू अत्यन्त तेजोमय, बलिष्ठ र सौम्य स्वभावका छन्। यिनीहरू आफ्नो कर्मठता र ग्रहणशक्तिले श्रेय र सौभाग्य समृद्ध गर्दछन्।

**गोभिर्वाणो अज्यते सोभरीणां रथे कोशे हिरण्यये।**
**गोबन्धवः सुजातास इषे भुजे महान्तो नः स्परसे नु ॥८॥**

सोभरी ऋषिका सुनौला रथमा गीतसँगै मरुत्को वीणा बज्दै छ। सुजन्मा, गोबन्धु र अत्यन्त महिमाशाली मरुत्हरूले हामीलाई अन्न तथा भोग्य पदार्थ प्रदान गरून्।

**प्रति वो वृषदञ्जयो वृष्णे शर्धाय मारुताय भरध्वम्। हव्या वृषप्रयाव्णे ॥९॥**

आदरपूर्वक सोम प्रदान गर्ने हे याजक हो ! शक्तिशाली मरुत्हरूको संवर्द्धनका लागि हविरूपी अन्न प्रदान गर। त्यसबाट उनीहरू बलवान् र द्रुतगामी बन्न सकून्।

**वृषणश्वेन मरुतो वृषप्सुना रथेन वृषनाभिना।**
**आ श्येनासो न पक्षिणो वृथा नरो हव्या नो वीतये गत ॥१०॥**

हे नायक मरुत्हरू हो ! शक्तिशाली अश्वले सम्पन्न बलियो रथमा आरुढ भएर तिमीहरू श्येन पक्षीझैं तेज गतिले हाम्रो हविरूपी अन्न ग्रहण गर्न यज्ञस्थलमा आओ।

**समानमञ्ज्येषां वि भ्राजन्ते रुक्मासो अधि बाहुषु। दविद्युतत्यृष्टयः ॥११॥**

मरुत्हरूको पहिरन एकै नासको छ। गलामा सुनौलो हार र पाखुरामा धारिलो हतियार चम्किँदै छन्।

**त उग्रासो वृषण उग्रबाहवो नकिष्टनूषु येतिरे।**
**स्थिरा धन्वान्यायुधा रथेषु वोऽनीकेष्वधि श्रियः ॥१२॥**

मरुत्हरू अत्यन्त विकराल र बलिष्ठ भुजा भएका छन्। यिनीहरू आफ्नो शरीर रक्षा गर्ने प्रयत्न

गर्दैनन्। हे मरुत्हरू हो ! तिमीहरूका रथमा बलिया धनुष र अन्य शस्त्रास्त्र विद्यमान छन्। त्यसैले तिमीहरू रणक्षेत्रमा सधैं विजयी हुन्छौ।

**येषामर्णो न सप्रथो नाम त्वेषं शश्वतामेकमिद्भुजे। वयो न पित्र्यं सहः ॥१३॥**

सबै मरुत्हरूको पैतृक सम्पत्तिजस्तै एउटै नाम छ। यिनीहरू तेजस्वी र जलजस्तै प्रावहमान छन्।

**तान्वन्दस्व मरुतस्ताँ उप स्तुहि तेषां हि धुनीनाम्।**
**अराणां न चरमस्तदेषां दाना मह्ना तदेषाम् ॥१४॥**

हुलै शत्रुलाई थर्काउने मरुत्हरूका बीचमा कुनै भेदभाव छैन। तिमीहरू उनको स्तुति र वन्दना गर। किनभने उनीहरूले दिएको दान अत्यन्त महत्त्वपूर्ण हुन्छ।

**सुगभः स व ऊतिष्वास पूर्वासु मरुतो व्युष्टिषु। यो वा नूनमुतासति ॥१५॥**

हे मरुत्हरू हो ! उहिले जुन उपासक तिमीहरूको अनुयायी बनेका थिए, उनीहरू तिम्रा रक्षणसाधनले संरक्षित भएर निश्चित रूपले सौभाग्यशाली भए।

**यस्य वा यूयं प्रति वाजिनो नर आ हव्या वीतये गथ।**
**अभि ष द्युम्नैरुत वाजसातिभिः सुम्ना वो धूतयो नशत् ॥१६॥**

शुत्रलाई प्रकम्पित गराउने नायक हे मरुत्हरू हो ! तिमीहरू जुन ऐश्वर्यशाली याजकको हविष्यान्न सेवन गर्नका लागि जान्छौ, त्यसले तिमीहरूको उज्ज्वल कीर्ति प्राप्त गरेर राम्रो सुखको उपभोग गर्दछ।

**यथा रुद्रस्य सूनवो दिवो वशन्त्यसुरस्य वेधसः। युवानस्तथेदसत ॥१७॥**

अर्काको रक्षा गर्नका लागि आफ्ना जीवनको बलिदान दिने युवक वीर मरुत्हरू दिव्यलोकबाट आउँदा हाम्रो व्यवहार उनीहरूका लागि अनुकूल होस्।

**ये चार्हन्ति मरुतः सुदानवः स्मन्मीळ्हुषश्चरन्ति ये।**
**अतश्चिदा न उप वस्यसा हृदा युवान आ ववृध्वम् ॥१८॥**

अन्य श्रेष्ठ दानी याजकहरूले मरुत्हरूको उपासना गर्दै उनीहरूको अनुरूप व्यवहार गरेझैं हामी पनि अनुकूल व्यवहार गरौं। हे वीर मरुत्हरू हो ! हाम्रा नजिकै आएर उदारतापूर्वक हामीलाई समृद्धि प्रदान गर।

**यून ऊ षु नविष्ठया वृष्णः पावकाँ अभि सोभरे गिरा।**
**गाय गा इव चर्कृषत् ॥१९॥**

हे सोभरी ऋषि ! हलीले हलो जोत्दा गोरु खुसी पार्न गीत गाएझैं तिमीहरू शक्ति सम्पन्न, पवित्र र नवयुवक वीर मरुत्हरूका लागि नयाँ स्तोत्र पाठ गर।

**साहा ये सन्ति मुष्टिहेव हव्यो विश्वासु पृत्सु होतृषु।**
**वृष्णश्चन्द्रान्न सुश्रवस्तमान् गिरा वन्दस्व मरुतो अह ॥२०॥**

शत्रुलाई हाँक दिएर मुड्की प्रहार गर्ने सैनिकको जस्तो आक्रमण सहन गर्ने बलिष्ठ, यशस्वी र चन्द्रमाजस्तै आनन्ददायक वीर मरुत्हरू नै प्रशंसाका लागि योग्य छन्। उत्तम स्तोत्रले उनीहरूको वन्दना गरौं।

**गावश्चिद्घा समन्यवः सजात्येन मरुतः सबन्धवः। रिहते ककुभो मिथः ॥२१॥**

समान उत्साहले युक्त मरुत्हरू हो ! सबै गाईको जात एउटै हुनाले भिन्नभिन्न ठाउँमा चरेर विचरण गरे पनि आपसमा चाटाचाट गरिरहन्छन्।

**मर्तश्चिद्वो नृतवो रुक्मवक्षस उप भ्रातृत्वमायति।**
**अधि नो गात मरुतः सदा हि व आपित्वमस्ति निध्रुवि ॥२२॥**

नाच्ने र आभूषणले सजिएको हृदय भएका मरुत्हरू हो ! तिमीहरूसित मानिसले मित्रताको आशा गर्दछन्। हामीसित भ्रातृत्व भावले रहँदै तिमीहरू खुसी होओ।

**मरुतो मारुतस्य न आ भेषजस्य वहता सुदानवः। यूयं सखायः सप्तयः ॥२३॥**

श्रेष्ठ दानी मित्रझैं हिँडडुल गर्ने मरुत्हरू हो ! पङ्क्तिबद्ध भएर हिँड्दै हावाद्वारा दिव्य औषधि लिएर हामीकहाँ आओ।

याभिः सिन्धुमवथ याभिस्तूर्वथ याभिर्दशस्यथा क्रिविम्।
मयो नो भूतोतिभिर्मयोभुवः शिवाभिरसचद्विषः ॥२४॥

हर्ष प्रदान गर्ने हे मरुत्‌हरू हो ! जुन रक्षणसाधनले तिमीहरूले समुद्रलाई संरक्षित गरेका थियौ, जसले कूप तयार पारेका थियौ, जसले आफ्ना शत्रु नष्ट गरेका थियौ, उनै शक्तिले हामीलाई सुख प्रदान गर।

यत्सिन्धौ यदसिक्न्यां यत्समुद्रेषु मरुतः सुबर्हिषः। यत्पर्वतेषु भेषजम् ॥२५॥

श्रेष्ठ तेजस्वी हे मरुत्‌हरू हो ! सिन्धु नदी, असिक्नी, समुद्र र पहाडमा भएका सबै औषधिको जानकारी तिमीहरूलाई छ।

विश्वं पश्यन्तो बिभृथा तनूष्वा तेना नो अधि वोचत।
क्षमा रपो मरुत आतुरस्य न इष्कर्ता विह्रुतं पुनः ॥२६॥

हे मरुत्‌हरू हो ! हाम्रो शरीर बलियो बनाओ। हामीमध्येका रोगी व्यक्तिको रोग पर हटाओ र भाँचिएका अङ्ग फेरि जोडिदेओ।

## [सूक्त – २१]

**ऋषि** – सोभरि काण्व। **देवता** – इन्द्र चित्र। **छन्द** – प्रगाथ।

वयमु त्वामपूर्व्य स्थूरं न कच्चिद्भरन्तोऽवस्यवः। वाजे चित्रं हवामहे ॥१॥

हे वज्रधारी, अनुपम इन्द्रदेव ! व्यावहारिक गुणसम्पन्न व्यक्तिलाई मानिसले बोलाएझैं रक्षाको कामनाले विशिष्ट सोमले तृप्त गराउँन हामी स्तुति गर्दछौं।

उप त्वा कर्मन्नूतये स नो युवोग्रश्चक्राम यो धृषत्।
त्वामिद्ध्यवितारं ववृमहे सखाय इन्द्र सानसिम् ॥२॥

हे शत्रुसंहारक तरुण र शूरवीर इन्द्रदेव ! हामी कर्मशीलहरू आफ्नो सहायताका लागि तिम्रो आश्रय लिन्छौं। सहायताका लागि तिमी मित्रजस्तै छौ भन्ने हामी सम्झन्छौं।

आ याहीम इन्दवोऽश्वपते गोपत उर्वरापते। सोमं सोमपते पिब ॥३॥

अश्व र गाईका स्वामी, भूमिका अधिपति, सोमरस पान गर्ने हे देवेन्द्र ! पेलेको सोमरस ग्रहण गर्नका लागि हामी तिमीलाई आह्वान गर्दछौं।

वयं हि त्वा बन्धुमन्तमबन्धवो विप्रास इन्द्र येमिम।
या ते धामानि वृषभ तेभिरा गहि विश्वेभिः सोमपीतये ॥४॥

हे मनोकामना पूरा गराउने इन्द्रदेव ! हामी बन्धुहीन विद्वान् ब्राह्मण तिमीलाई नै दाजुभाइ मान्दछौं। आफ्ना सम्पूर्ण ओजका साथ सोमरस पान गर्नका लागि आऊ।

सीदन्तस्ते वयो यथा गोश्रीते मधौ मदिरे विवक्षणे। अभि त्वामिन्द्र नोनुमः ॥

हे इन्द्रदेव ! पेलेर तयार गरेपछि गाईको दुध मिसाएको स्फुर्तिदायक र वाणीमा शक्ति दिने सोमरसका नजिकै हामी पक्षीजस्तै एकत्रित हुन्छौं र तिमीलाई नमस्कार गर्दछौं।

अच्छा च त्वैना नमसा वदामसि किं मुहुश्चिद्वि दीधयः।
सन्ति कामासो हरिवो ददिष्ट्वं स्मो वयं सन्ति नो धियः ॥६॥

हरियो अश्व भएका हे इन्द्रदेव ! हामी नमस्कारपूर्वक तिम्रो महिमा गाउँछौं। तिमी कुन सोचविचारमा छौ ? हे अश्वयुक्त इन्द्रदेव ! तिमी दाता हौ, हाम्रो कामना र हाम्रो बुद्धि तिम्रा अगाडि छ।

नूत्ना इदिन्द्र ते वयमूती अभूम नहि नू ते अद्रिवः। विद्मा पुरा परीणसः ॥७॥

हे वज्रधारी इन्द्रदेव ! तिमीबाट संरक्षित भएर हामी सधैं नयाँ भइरहन्छौं। तिमी सर्वव्यापी हौ, तिम्रो यस्तो महानता हामीलाई थाहा थिएन, तर अब थाहा पायौं। त्यसैले हामी सबै तिमीबाट रक्षित होऔं।

विद्मा सखित्वमुत शूर भोज्य१मा ते ता वज्रिन्नीमहे।
उतो समस्मिन्ना शिशीहि नो वसो वाजे सुशिप्र गोमति ॥८॥

हे शूरवीर तथा वज्रधारी इन्द्रदेव ! हामीलाई तिम्रो मित्रता र ऐश्वर्य थाहा छ। त्यसैले हामी त्यसको कामना गर्दछौं। सबैलाई पालन गर्ने सुहाउँदो मुकुट लगाएका हे इन्द्र ! हामीलाई गाई आदि धनले सम्पन्न बनाऊ।

**यो न इदमिदं पुरा प्र वस्य आनिनाय तमु वः स्तुषे। सखाय इन्द्रमूतये ॥९॥**
हे मित्रहरू हो ! उहिलेदेखि धनवैभव प्रदान गर्ने इन्द्रदेवलाई तिम्रो र हाम्रो कल्याणका लागि स्तुति गरौं।

**हर्यश्वं सत्पतिं चर्षणीसहं स हि ष्मा यो अमन्दत।**
**आ तु नः स वयति गव्यमश्व्यं स्तोतृभ्यो मघवा शतम् ॥१०॥**
साधकहरू हरिया अश्व भएका, भद्र जनलाई पालन गर्ने र शत्रु परास्त गर्ने इन्द्रदेवलाई प्रार्थना गर्दछन्। त्यसबाट इन्द्र प्रसन्न हुन्छन्। इन्द्रदेवले हामी स्तुतिकर्तालाई सयौं किसिमका गाई र अश्वले युक्त ऐश्वर्य प्रदान गरुन्।

**त्वया ह स्विद्युजा वयं प्रति श्वसन्तं वृषभ ब्रुवीमहि। संस्थे जनस्य गोमतः ॥**
साँढेजस्तै बलिया हे इन्द्रदेव ! गाई आदि उपकारी पशुका पालकप्रति क्रोध व्यक्त गर्नेलाई तिम्रा सहायताले उचित प्रत्युत्तर दिएर हामी भगाउन सकौं।

**जयेम कारे पुरुहूत कारिणोऽभि तिष्ठेम दूढ्यः।**
**नृभिर्वृत्रं हन्याम शूशुयाम चावेरिन्द्र प्र णो धियः ॥१२॥**
धेरै तिरबाट बोलाइने हे इन्द्रदेव ! लडाइँका क्षेत्रमा हामी हिंसक र दुर्बुद्धिग्रस्त शत्रुमाथि विजय प्राप्त गरौं। हामी तिम्रा सहयोगले वृत्रको वध गरेर तिम्रो कीर्ति फिँजाऔं। हे इन्द्रदेव ! तिमी हाम्रो बुद्धि र यज्ञ आदि कर्मको सुरक्षा गर।

**अभ्रातृव्यो अना त्वमनापिरिन्द्र जनुषा सनादसि। युधेदापित्वमिच्छसे ॥१३॥**
हे इन्द्रदेव ! तिमी जन्मदेखि नै दाजुभाइको झमेलाबाट मुक्त छौ। तिमीमाथि शासन गर्ने कोही छैन र न त सहायता गर्ने कुनै बन्धु नै छन्। तिमी युद्धद्वारा आफ्ना सहयोगी र भक्तलाई पाउने कामना गर्दछौ।

**नकी रेवन्तं सख्याय विन्दसे पीयन्ति ते सुराश्वः।**
**यदा कृणोषि नदनुं समूहस्यादित्पितेव हूयसे ॥१४॥**
हे इन्द्रदेव ! तिमी धनको अभिमान गर्नेलाई मित्र बनाउँदैनौ। सुरा पिएर मदले अन्धो हुनेले तिमीलाई दुःख दिन्छन्। ज्ञानगुणले सम्पन्नहरूको मित्र बनेर तिमी उन्नतिपथमा चल्दछौ। त्यसले गर्दा तिमी हामीबाट पिताको जस्तै सम्मान प्राप्त गर्दछौ।

**मा ते अमाजुरो यथा मूरास इन्द्र सख्ये त्वावतः। नि षदाम सचा सुते ॥१५॥**
हे इन्द्रदेव ! हामी तिम्रो मित्रता प्राप्त गरेर आफ्ना घरमा पुत्रपौत्र आदिसँगै रहँदै समृद्धि प्राप्त गरौं। सोम पेल्ने बेलामा हामी एकत्र भएर बसौं।

**मा ते गोदत्र निरराम राधस इन्द्र मा ते गृहामहि।**
**दृळ्हा चिदर्यः प्र मृशाभ्या भर न ते दामान आदभे ॥१६॥**
हे इन्द्रदेव ! तिमी गाईरूपी सहयोग प्रदान गर्दछौ। हामी पनि तिम्रो सम्पत्तिबाट वञ्चित नहोऔं। हामीलाई तिमीबाहेक अरू कसैको सम्पत्ति लिनु नपरोस्। हामीलाई तिमी कसैले खोस्न नसक्ने ऐश्वर्यले परिपूर्ण गराऊ।

**इन्द्रो वा घेदियन्मघं सरस्वती वा सुभगा ददिर्वसु। त्वं वा चित्र दाशुषे ॥१७॥**
हे राजन् ! आहुति प्रदान गर्ने याजकलाई यति धेरै सम्पत्ति के इन्द्रदेवले नै प्रदान गरेका हुन् ? अथवा सम्पत्तिकी स्वामिनी सरस्वतीले हो ? अथवा तिमीले नै पो यो दान दिएका हौ कि ?

**चित्र इद्राजा राजका इदन्यके यके सरस्वतीमनु।**
**पर्जन्यइव ततनद्धि वृष्ट्या सहस्रमयुता ददत् ॥१८॥**
सबैतिर पर्जन्य फैलिएझैं सरस्वतीको अनुसरण गर्ने राजा चित्रले अन्य राज्यका आश्रितलाई हजारौं वा लाखौं किसिमका अनुदान सहयोग प्रदान गरे।

## [सूक्त – २२]

**ऋषि** – सोभरि काण्व। **देवता** – अश्विनीकुमार। **छन्द** – प्रगाथ बृहती अनुष्टुप ककुप्।

**ओ त्यमह्व आ रथमद्या दंसिष्ठमूतये।**
**यमश्विना सुहवा रुद्रवर्तनी आ सूर्यायै तस्थथुः ॥१॥**
दर्शनीय रथमा सूर्यालाई वरण गर्नका लागि आरुढ भएका हे अश्विनीकुमार हो ! तिमीहरूको रथ आह्वान गर्न योग्य छ। हामी आफ्नो रक्षाका लागि आह्वान गर्दछौं।

**पूर्वापुषं सुहवं पुरुस्पृहं भुज्युं वाजेषु पूर्व्यम्।**
**सचनावन्तं सुमतिभिः सोभरे विद्वेषसमनेहसम् ॥२॥**

अश्विनीकुमारको रथ स्तुति गर्नेलाई पोषक र सरलतापूर्वक आह्वान गर्न योग्य छ। सबैले रुचाउने यो रथ सबैलाई पोषण प्रदान गर्दछ र लडाईंका भूमिमा सबैभन्दा अगाडि रहन्छ। यसबाट शत्रु पनि ईर्ष्या गर्दछन्, त्यस्तो श्रेष्ठ रथलाई हे सोभरी ऋषि ! तिमी आफ्ना प्रार्थनाद्वारा प्रशंसा गर।

**इह त्या पुरुभूतमा देवा नमोभिरश्विना।**
**अर्वाचीना स्ववसे करामहे गन्तारा दाशुषो गृहम् ॥३॥**

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै हवि प्रदान गर्ने याजकका घरमा जान्छौ। हामी आफ्ना यज्ञको संरक्षणका लागि तिमीहरूलाई नमस्कारपूर्वक आह्वान गर्दछौं।

**युवो रथस्य परि चक्रमीयत ईर्मान्यद्वामिषण्यति।**
**अस्माँ अच्छा सुमतिर्वां शुभस्पती आ धेनुरिव धावतु ॥४॥**

हे अश्विनीकुमार हो ! तिमीहरूका रथको एउटा पाङ्ग्रो द्युलोकमा रहन्छ भने अर्को चाहिं तिमीहरूसितै हुन्छ। हे कल्याणकारी रसधाराका स्वामीहरू हो ! तिमीहरूको गाईजस्तै उपकारी बुद्धि हामीलाई चाँडै आओस्।

**रथो यो वां त्रिवन्धुरो हिरण्याभीशुरश्विना।**
**परि द्यावापृथिवी भूषति श्रुतस्तेन नासत्या गतम् ॥५॥**

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै सत्यका पालक हौ। तीन किसिमका गद्दी र चाबुक युक्त सुप्रसिद्ध सुनौलो रथ द्यावापृथिवीमा विभूषित छ, त्यो रथ हाम्रा निकट आओस्।

**दशस्यन्ता मनवे पूर्व्यं दिवि यवं वृकेण कर्षथः।**
**ता वामद्य सुमतिभिः शुभस्पती अश्विना प्र स्तुवीमहि ॥६॥**

कल्याणका स्वामी हे अश्विनीकुमार हो ! तिमीहरूले सबैभन्दा पहिले दिव्यलोकमा रहेको सम्पत्ति मनुलाई प्रदान गर्‍यौं, त्यसपछि हलोले खेती गर्‍यौं। यस्ता सुप्रसिद्ध तिमीहरू दुवैलाई श्रेष्ठ स्तुतिले हामी प्रशंसा गर्दछौं।

**उप नो वाजिनीवसू यातमृतस्य पथिभिः।**
**येभिस्तृक्षिं वृषणा त्रासदस्यवं महे क्षत्राय जिवन्थः ॥७॥**

त्रसदस्युका पुत्र तृक्षीलाई क्षत्रियको अनुरूप महान् शौर्य प्रकट गर्नका लागि प्रेरणा दिन गएका यज्ञीय मार्गबाट हाम्रा निकट आओ।

**अयं वामद्रिभिः सुतः सोमो नरा वृषण्वसू।**
**आ यातं सोमपीतये पिबतं दाशुषो गृहे ॥८॥**

ऐश्वर्यको वर्षा गराउने हे अश्विनीकुमार हो ! सोमरस ढुङ्गाले कुटेर तिमीहरूका लागि तयार गरिएको छ। आहुति प्रदान गर्ने याजकका घरमा आएर सोमरस पान गर।

**आ हि रुहतमश्विना रथे कोशे हिरण्यये वृषण्वसू। युञ्जाथां पीवरीरिषः ॥९॥**

धनको वर्षा गर्ने हे अश्विनीकुमार हो ! तिमीहरूको सुनौलो रथ हतियार र पौष्टिक अन्नका भण्डारले भरिएको छ, उसमा आसीन होओ।

**याभिः पक्थमवथो याभिरध्रिगुं याभिर्बभ्रुं विजोषसम्।**
**ताभिर्नो मक्षू तूयमश्विना गतं भिषज्यतं यदातुरम् ॥१०॥**

हे अश्विनीकुमार हो ! विशेष रूपले सेवाको सहायता गर्ने पक्थ, अध्रिगु र बभ्रुलाई रक्षित र पोषित गराएका सामर्थ्यले दुःखीलाई औषधिउपचार र संरक्षण प्रदान गर।

**यदध्रिगावो अध्रिगू इदा चिदह्नो अश्विना हवामहे। वयं गीर्भिर्विपन्यवः ॥११॥**

शीघ्रगामी हे अश्विनीकुमारहरू हो ! काममा बाधा आउँदा तिमीहरूलाई बिहानै स्तुति वचनले हामी आहुत गर्दछौं। त्यसैले तिमीहरू निश्चित रूपले आओ।

**ताभिरा यातं वृषणोप मे हवं विश्वप्सुं विश्ववार्यम्।**
**इषा मंहिष्ठा पुरुभूतमा नरा याभिः क्रिविं वावृधुस्ताभिरा गतम् ॥१२॥**

दानी तथा शक्तिशाली नायक हे अश्विनीकुमार हो ! सबैले स्वीकार गर्ने हाम्रो सबै स्तुति तिमीहरू सुन। आफ्ना सामर्थ्य र ऐश्वर्यले सम्पन्न भएर हाम्रा नजिकै आओ र जलले जलकुण्ड भरिपूर्ण गराओ।

**ताविदा चिदहानां तावश्विना वन्दमान उप ब्रुवे। ता ऊ नमोभिरीमहे ॥१३॥**

बिहानी हामी दुवै अश्विनीकुमारको वन्दना गर्दछौं। हामी नजिकै बसेर स्तुति गर्दै उनीहरूको कामना गर्दछौं।

**ताविद्दोषा ता उषसि शुभस्पती ता यामन्नुदवर्तनी।**
**मा नो मर्ताय रिपवे वाजिनीवसू परो रुद्रावति ख्यतम् ॥१४॥**

पालक र बलवान् हे अश्विनीकुमार हो ! तिमीहरूलाई हामी विहान र राती बोलाउँछौं। तिमीहरू रणक्षेत्रमा वीरको मार्ग अनुसरण गर्दछौं। बल पुष्ट गराउने र धनधान्यले सम्पन्न तिमीहरू हामीलाई शत्रुका अधीनमा पर्न नदेओ।

**आ सुग्म्याय सुग्म्यं प्राता रथेनाश्विना वा सक्षणी। हुवे पितेव सोभरी ॥१५॥**

हे अश्विनीकुमार हो ! पिताले आफ्ना पुत्रलाई पुकारेझैं हामी आह्वान गर्दछौं। हामी सुख प्राप्त गर्न योग्य छौं। त्यसैले विहानपख रथमा आरुढ भएर सुख प्रदान गर्न आओ।

**मनोजवसा वृषणा मदच्युता मक्षुङ्गमाभिरूतिभिः।**
**आरात्ताच्चिद्भूतमस्मे अवसे पूर्वीभिः पुरुभोजसा ॥१६॥**

हे अश्विनीकुमार हो ! ऐश्वर्य वर्षा गराउने, मनजस्तै द्रुत गतिले चल्ने र शत्रुको अहङ्कार नष्ट गराउने तिमीहरू नै हौ। शीघ्रगामी रक्षणसाधनले सम्पन्न भएर हाम्रा नजिकै बस।

**आ नो अश्वावदश्विना वर्तिर्यासिष्टं मधुपातमा नरा। गोमद्दस्रा हिरण्यवत् ॥१७**

मधुर सोमरस पान गर्ने हे अश्विनीकुमार हो ! यज्ञीय मार्गलाई अश्व, गाई, स्वर्ण आदिले सम्पन्न बनाउँदै हाम्रा आवासमा आओ।

**सुप्रावर्गं सुवीर्यं सुष्टु वार्यमनाधृष्टं रक्षस्विना।**
**अस्मिन्ना वामायाने वाजिनीवसू विश्वा वामानि धीमहि ॥१८॥**

शक्तिशाली हे अश्विनीकुमार हो ! तिमीहरू आउँदा हामी श्रेष्ठ पराक्रमले सम्पन्न र सरलतापूर्वक दान गर्न योग्य सम्पत्ति प्राप्त गर्दछौं। बलवान् मानिस पनि तिमीहरूमाथि आक्रमण गर्न सक्दैन, त्यसैले उचित किसिमले वरण गर्न योग्य छौ।

[सूक्त - २३]

ऋषि - विश्वमना वैयश्व। देवता - अग्नि। छन्द - उष्णिक्।

**ईळिष्वा हि प्रतीव्यं यजस्व जातवेदसम्। चरिष्णुधूममगृभीतशोचिषम् ॥१॥**

हे स्तोता हो ! शत्रुविजयी, अदम्य तेजयुक्त, सर्वव्यापी, धुवाँले सुशोभित, सर्वज्ञ अग्निदेवलाई तिमीहरू अर्चना गर।

**दामानं विश्वचर्षणेऽग्निं विश्वमनो गिरा। उत स्तुषे विष्पर्धसो रथानाम् ॥२॥**

सम्पूर्ण जगत्लाई एकै दृष्टिले हेर्ने हे विश्वमना ऋषि ! स्पर्धा गर्ने याजकलाई रथ आदि प्रदान गर्ने अग्निदेवलाई आफ्ना स्तुति वचनले प्रशंसा गर।

**येषामाबाध ऋग्मिय इषः पृक्षश्च निग्रभे। उपविदा वह्निर्विन्दते वसु ॥३॥**

प्रार्थना योग्य अग्निदेव शत्रुलाई दण्डित गर्दछन्। उनी जुन हविदाताको हविष्यान्न र सोमरस स्वीकार गर्दछन्, उसलाई नै ऐश्वर्यले सम्पन्न बनाउँछन्।

**उदस्य शोचिरस्थाद्दीदियुषो व्यजरम्। तपुर्जम्भस्य सुद्युतो गणश्रियः ॥४॥**

आलोकवान् अग्निदेव शत्रुलाई सताउँछन्। उनी श्रेष्ठ तथा दर्शनीय तेजले सम्पन्न छन्। उनको अविनाशी प्रकाश ऊर्ध्वमुखी भएर प्रकट भइरहेको छ।

**उदु तिष्ठ स्वध्वर स्तवानो देव्या कृपा। अभिख्या भासा बृहता शुशुक्वनिः ॥**

श्रेष्ठ यज्ञ आदि कर्म गर्ने हे याजक हो ! अग्निदेवको साधना गरेर तिमीहरू यशस्वी, तेजस्वी र महान् होओ। उनको प्रसन्नता प्राप्त गरेर तिमीहरू उन्नति गर।

**अग्ने याहि सुशस्तिभिर्हव्या जुह्वान आनुषक्। यथा दूतो बभूथ हव्यवाहनः ॥**

हे अग्निदेव ! तिमी देवताका निम्ति आहुति वहन गर्दछौ। श्रेष्ठ स्तुति र आहुति प्राप्त गरेर देवतासम्म पुऱ्याउनका लागि प्रस्थान गर।

अग्निं वः पूर्व्यं हुवे होतारं चर्षणीनाम्। तमया वाचा गृणे जमु वः स्तुषे ॥७॥
हामी याजकहरू प्राचीनतम अग्निदेवको प्रार्थना गर्दै उनलाई आह्वान गर्दछौं। अरू सबैलाई उनैको प्रार्थना गर्नका लागि प्रेरित गर्दछौं।

यज्ञेभिरद्भुतक्रतुं यं कृपा सूदयन्त इत्। मित्रं न जने सुधितमृतावनि ॥८॥
सखा तुल्य, सबैका हितैषि अग्निदेव, अत्यन्त ज्ञानी छन्। यजन गर्दै उनलाई घिउको आहुति समर्पित गर्ने साधकहरू तिनका कृपाले समृद्ध हुन्छन्।

ऋतावानमृतायवो यज्ञस्य साधनं गिरा। उपो एनं जुजुषुर्नमसस्पदे ॥९॥
यज्ञको आकाङ्क्षा गर्ने हे साधक हो ! तिमीहरू अग्निदेवलाई आफ्ना स्तुति वचनले पूजा गर। उनी नित्य ज्ञान प्रदान गर्ने र यज्ञका आधाररूप हुन्।

अच्छा नो अङ्गिरस्तमं यज्ञासो यन्तु संयतः।
होता यो अस्ति विक्ष्वा यशस्तमः ॥१०॥
अग्निदेव यज्ञ सम्पादनकर्ता र कीर्तिवान् हुन्। उनी श्रेष्ठ आङ्गिरसका लागि हाम्रा सबै कर्म समर्पित छन्।

अग्ने तव त्ये अजरेन्धानासो बृहद्भाः। अश्वा इव वृषणस्तविषीयवः ॥११॥
हे अविनाशी अग्निदेव ! जगत्लाई आलोकित गर्ने तिम्रो महान् किरण अश्वजस्तै अत्यन्त शक्तिशाली छ। त्यसले सबैका इच्छा पूरा गराउँछ।

स त्वं न ऊर्जां पते रयिं रास्व सुवीर्यम्। प्राव नस्तोके तनये समत्स्वा ॥१२॥
बलका स्वामी हे अग्निदेव ! हामीलाई तिमी श्रेष्ठ बलले सम्पन्न धन प्रदान गर। रणक्षेत्रमा हाम्रा पुत्रपौत्रलाई उचित रूपमा संरक्षित गर।

यद्वा उ विश्पतिः शितः सुप्रीतो मनुषो विशि।
विश्वेदग्निः प्रति रक्षांसि सेधति ॥१३॥
यजमानका रक्षक र हविष्यान्नले प्रदीप्त हुने अग्निदेव प्रसन्न भएर याजककहाँ प्रतिष्ठित हुन्छन्। उनी सबै दुष्ट र दुराचारीलाई विनाश गर्दछन्।

श्रुष्ट्यग्ने नवस्य मे स्तोमस्य वीर विश्पते। नि मायिनस्तपुषा रक्षसो दह ॥१४
हे प्रजापालक अग्निदेव ! हाम्रो यो नयाँ स्तोत्र सुनेर उत्साही हुँदै तिमी छली र कपटी दुष्टलाई आफ्ना प्रखर तेजले भस्म गराइदेऊ।

न तस्य मायया चन रिपुरीशीत मर्त्यः। यो अग्नये ददाश हव्यदातिभिः ॥१५॥
अग्निदेव हविष्यान्न आहुति प्रदान गर्ने यजमानमाथि कुनै पनि दुष्टका मायाको प्रभाव पर्न दिँदैनन्।

व्यश्वस्त्वा वसुविदमुक्षण्युरप्रीणादृषिः। महो राये तमु त्वा समिधीमहि ॥१६॥
हे सम्पूर्ण जगत्लाई पालन र सुख प्रदान गर्ने सामर्थ्यवान् अग्निदेव ! व्यश्व ऋषिले धन प्राप्त गर्ने इच्छाले तिमीलाई प्रसन्न गरेका थिए। हामी प्रचुर धन प्राप्त गर्नका लागि तिमीलाई राम्ररी प्रदीप्त गराउँछौं।

उशना काव्यस्त्वा नि होतारमसादयत्। आयजिं त्वा मनवे जातवेदसम् ॥१७॥
हे अग्निदेव ! तिमी सम्पूर्ण जगत्का ज्ञाता र पूजा गर्न योग्य छौ। उशना ऋषिले तिमीलाई याजकका रूपमा मनुका घरमा प्रतिष्ठित गरेका थिए।

विश्वे हि त्वा सजोषसो देवासो दूतमक्रत। श्रुष्टी देव प्रथमो यज्ञियो भुवः ॥
हे अग्निदेव ! परस्पर प्रेमपूर्वक निवास गर्ने देवताले तिमीलाई सन्देशवाहक बनाए। तिमी आफ्ना द्रुतगामी गुणका कारण यज्ञमा सबैभन्दा पहिले वन्दनीय भयौ।

इमं घा वीरो अमृतं दूतं कृण्वीत मर्त्यः। पावकं कृष्णवर्तनिं विहायसम् ॥१९॥
हे मानिस हो ! अविनाशी अग्निदेवलाई तिमीहरू सन्देशवाहक बनाओ। उनी धुवाँको मार्गबाट गमन गर्दछन्।

तं हुवेम यतस्रुचः सुभासं शुक्रशोचिषम्। विशामग्निमजरं प्रत्नमीड्यम् ॥२०॥
अग्निदेव श्रेष्ठ, तेजस्वी र दिव्य आलोकले सम्पन्न छन्। उनी अविनाशी र मानिसका प्रार्थनीय छन्। हामी उनलाई आह्वान गर्दछौं।

आ अस्मै हव्यदातिभिराहुतिं मर्तोऽविधत्। भूरि पोषं स धत्ते वीरवद्यशः ॥२१
अग्निदेवलाई आहुति प्रदान गर्ने याजकहरू अत्यन्त पौष्टिक अन्न र पराक्रमी सन्तानले सम्पन्न भएर कीर्ति प्राप्त गर्दछन्।

प्रथमं जातवेदसमग्निं यज्ञेषु पूर्व्यम्। प्रति स्रुगेति नमसा हविष्मती ॥२२॥
अग्निदेव सम्पूर्ण जगत्का ज्ञाता, देवताहरूमा प्रमुख र सबैभन्दा प्राचीन हुन्। यज्ञमा हव्यले भरिएको स्रुक पात्र समर्पित गर्दै हामी विनम्रतापूर्वक उनको सेवा गर्दछौँ।

आभिर्विधेमाग्नये ज्येष्ठाभिर्व्यश्ववत्। मंहिष्ठाभिर्मतिभिः शुक्रशोचिषे ॥२३॥
अश्वजस्तै शक्तिशाली र ज्ञानयुक्त स्तोत्रले हामी तेजस्वी अग्निदेवलाई वन्दना गर्दछौँ।

नूनमर्च विहायसे स्तोमेभिः स्थूरयूपवत्। ऋषे वैयश्व दम्यायाग्नये ॥२४॥
हे विश्वमना ऋषि ! स्थूरयूप ऋषिले जस्तै तिमी आफ्नै स्तुतिले शत्रु दमन गर्ने महान् अग्निदेवको उपासना गर।

अतिथिं मानुषाणां सूनुं वनस्पतीनाम्। विप्रा अग्निमवसे प्रत्नमीडते ॥२५॥
ज्ञानी, याजक, मानिसका अतिथि, समिधाले उत्पन्न र अत्यन्त प्राचीन अग्निदेवलाई हामी आफ्नो सुरक्षाका निम्ति प्रार्थना गर्दछौँ।

महो विश्वाँ अभिषतोऽभि हव्यानि मानुषा। अग्ने नि षत्सि नमसाधि बर्हिषि ॥
हे अग्निदेव ! तिमी आफ्ना शक्तिले सम्पूर्ण पदार्थमा विद्यमान रहन्छौ। याजकले दिएको आहुति ग्रहण गर्दछौ। स्तवनले पूजित भएर तिमी यज्ञमा विद्यमान रहन्छौ।

वंस्वा नो वार्या पुरु वंस्व रायः पुरुस्पृहः। सुवीर्यस्य प्रजावतो यशस्वतः ॥२७
हे अग्निदेव ! हामीलाई अनेकौँले रुचाएर पाउन खोजेको तथा सन्तान, साहस, कीर्ति र अन्न आदि वैभव प्रदान गर्ने सम्पत्ति तिमी प्रदान गर।

त्वं वरो सुषाम्णेऽग्ने जनाय चोदय। सदा वसो रातिं यविष्ठ शश्वते ॥२८॥
हे शक्तिशाली अग्निदेव ! तिमी अनेकौँद्वारा वरणीय निवास प्रदान गर्दछौ। स्तोताको कल्याणका लागि तिमी सधैँ सम्पत्ति प्रदान गर।

त्वं हि सुप्रतूरसि त्वं नो गोमतीरिषः। महो रायः सातिमग्ने अपा वृधि ॥२९॥
हे श्रेष्ठ ऐश्वर्य प्रदान गर्ने अग्निदेव ! तिमी दाता हौ, हामीलाई गाई, अन्न आदिले सम्पन्न प्रचुर धन वैभव प्रदान गर।

अग्ने त्वं यशा अस्या मित्रावरुणा वह। ऋतावाना सम्राजा पूतदक्षसा ॥३०॥
हे अग्निदेव ! देवताहरूका बीचमा तिमी अत्यन्त कीर्तिमान छौ। मित्र र वरुणदेवलाई पनि हाम्रा यस यज्ञमा लिएर आऊ। उनीहरू अत्यन्त तेजयुक्त, शक्तिशाली र सत्यका पालक छन्।

[सूक्त - २४]

ऋषि - विश्वमना वैयश्व। देवता - इन्द्र वरु सौषाम्णि। छन्द - उष्णिक् अनुष्टुप्।

सखाय आ शिषामहि ब्रह्मेन्द्राय वज्रिणे। स्तुष ऊ षु वो नृतमाय धृष्णवे ॥१॥
हे मित्रहरू हो ! हामी आफ्ना स्तोत्रले वज्र धारण गर्ने इन्द्रदेवको स्तुति गर्दै आशीर्वाद माग्दछौँ। श्रेष्ठ वीर र शत्रु पराजित गर्ने इन्द्रदेवलाई तिमीहरू सबैको कल्याणका लागि हामी स्तुति गर्दछौँ।

शवसा ह्यसि श्रुतो वृत्रहत्येन वृत्रहा। मघैर्मघोनो अति शूर दाशसि ॥२॥
हे याजक मित्र हो ! वज्र धारण गर्ने इन्द्रदेवका लागि स्तुति पाठ गर्दछौँ। तिमीहरू पनि उनै शत्रुसंहारक तथा महान् नायक इन्द्रदेवलाई राम्ररी प्रार्थना गर।

स नः स्तवान आ भर रयिं चित्रश्रवस्तमम्। निरेके चिद्यो हरिवो वसुर्ददिः ॥३
अश्वले सम्पन्न हे इन्द्रदेव ! हामीले प्रशंसा गरेपछि प्राप्त गर्न योग्य र श्रेष्ठ कीर्ति प्रदायक धन हामीलाई प्रदान गर। तिमी सम्पत्तिवान्लाई नै धन प्रदान गर्दछौ।

आ निरेकमुत प्रियमिन्द्र दर्षि जनानाम्। धृषता धृष्णो स्तवमान आ भर ॥४॥
हे शत्रुसंहारक इन्द्रदेव ! हामीले स्तुति गर्दाखेरि हामीलाई शक्तिले सम्पन्न ऐश्वर्य प्रदान गर। शत्रुको वैभव पनि हामीलाई नै प्रदान गर।

न ते सव्यं न दक्षिणं हस्तं वरन्त आमुरः। न परिबाधो हरिवो गविष्टिषु ॥५॥
अश्वले सम्पन्न हे इन्द्रदेव ! रणक्षेत्रमा युद्ध गर्ने शत्रु तिम्रा दाहिने र बायाँ हात रोक्न सक्दैनन्। तिम्रा कार्यमा बाधा हाल्ने प्रयास गर्नेहरूले पनि तिम्रो अनर्थ गर्न सक्दैनन्।

आ त्वा गोभिरिव व्रजं गीर्भिर्ऋणोम्यद्रिवः।
आ स्मा कामं जरितुरा मनः पृण ॥६॥
हे वज्रधारी इन्द्रदेव ! गाई पाल्ने गोठालो गाईसितै गोठमा पसेभैँ हामी आफ्नो प्रार्थना लिएर तिम्रा नजिक पुग्दछौँ। हाम्रा मनोकामनाहरू पूरा गरेर शान्ति प्रदान गर।

विश्वानि विश्वमनसो धिया नो वृत्रहन्तम। उग्र प्रणेतरधि षू वसो गहि ॥७॥
हे वृत्रसंहारक वीर इन्द्रदेव ! तिमी श्रेष्ठ निवास प्रदान गर्दछौ। तिमी विश्वमना ऋषिका समस्त कार्यलाई विवेकपूर्वक सम्पन्न गराऊ र आफ्नो निकटता प्रदान गर।

वयं ते अस्य वृत्रहन्विद्याम शूर नव्यसः। वसोः स्पार्हस्य पुरुहूत राधसः ॥८॥
हे वृत्रहन्ता पराक्रमी इन्द्रदेव ! तिमीलाई सबै मानिसले बोलाउँछन्। हामीलाई मनको रहर पूरा गराउने खालको, प्रशंसनीय र रुचि लाग्ने ऐश्वर्य प्रदान गर।

इन्द्र यथा ह्यस्ति तेऽपरीतं नृतो शवः। अमृक्ता रातिः पुरुहूत दाशुषे ॥९॥
हे श्रेष्ठ नायक इन्द्रदेव ! तिम्रो असीमित बल शत्रुले विनाश गर्न सक्दैन। हे धेरैले आह्वान गर्ने इन्द्रदेव ! दानीले प्रदान गरेको दान पनि कहिल्यै नष्ट हुँदैन।

आ वृषस्व महामह महे नृतम राधसे। दृळ्हश्चिद् दृह्य मघवन्मघत्तये ॥१०॥
हे धनवान् तथा उत्तम नायक इन्द्रदेव ! तिमी अत्यन्त पूजनीय छौ। मधुर सोमरस पिएर तृप्त होऊ र हामीलाई सम्पत्ति प्रदान गर्नका लागि शत्रुको बलियो सहर भत्काऊ।

नू अन्यत्रा चिदद्रिवस्त्वन्नो जग्मुराशसः। मघवञ्छग्धि तव तन्न ऊतिभिः ॥११
हे सम्पत्तिले सम्पन्न, वज्रधारी इन्द्रदेव ! पहिले त हामीले अन्य देवताबाट आशा गरेका थियौं। तिमी आफ्ना रक्षण साधनले सम्पन्न भएर हामीलाई सम्पत्ति प्रदान गर।

नह्यङ्ग नृतो त्वदन्यं विन्दामि राधसे। राये द्युम्नाय शवसे च गिर्वणः ॥१२॥
आत्मीय नायक र प्रार्थनायोग्य हे इन्द्रदेव ! यश, सम्पत्ति र तेजोबल प्राप्त गर्नका लागि हामी तिम्रा अतिरिक्त कुनै पनि अन्य देवतालाई चिन्दैनौं।

एन्दुमिन्द्राय सिञ्चत पिबाति सोम्यं मधु। प्र राधसा चोदयाते महित्वना ॥१३
हे ऋत्विक्हरू हो ! इन्द्रदेवका निम्ति सोमरस समर्पित गर। त्यो मधुर सोमरस पान गरेर उनले आफ्ना प्रभावद्वारा याजकलाई विपुल धन प्रदान गर्दछन्।

उपो हरीणां पतिं दक्षं पृञ्चन्तमब्रवम्। नूनं श्रुधि स्तुवतो अश्व्यस्य ॥१४॥
अश्वका अधिपति, स्तोतालाई धन प्रदान गर्ने इन्द्रदेवको स्तुति गरौं। हे इन्द्रदेव ! स्तुति गर्न लागेका अश्व्यको स्तोत्र तिमी निश्चित रूपले सुन।

नह्यङ्ग पुरा चन जज्ञे वीरतरस्त्वत्। नकी राया नैवथा न भन्दना ॥१५॥
हे इन्द्रदेव ! तिमीभन्दा पहिले तिमीजस्तो वीर, धनदाता, युद्धमा शत्रु परास्त गर्ने र स्तुति योग्य अन्य कुनै देवता थिएनन्।

एदु मध्वो मदिन्तरं सिञ्च वाध्वर्यो अन्धसः।
एवा हि वीरः स्तवते सदावृधः ॥१६॥
हे ऋत्विक् हो ! मधुर सोमपानले आनन्दित हुने इन्द्रदेवलाई सोमरस समर्पित गर। पराक्रमी र निरन्तर वृद्धि प्राप्त गर्ने इन्द्रदेव नै स्तोताहरूद्वारा सधैं प्रशंसित हुन्छन्।

इन्द्र स्थातर्हरीणां नकिष्टे पूर्व्यस्तुतिम्। उदानंश शवसा न भन्दना ॥१७॥
हे अश्वपति इन्द्रदेव ! ऋषिले तयार गरेको तिम्रो स्तुति आफ्नो सामर्थ्य र तेजले गर्दा अरू कसैले पनि प्राप्त गर्न सक्दैनन्। तिमीजस्तो बलवान् र तेजस्वी अरू छैनन्।

तं वो वाजानां पतिमहूमहि श्रवस्यवः। अप्रायुभिर्यज्ञेभिर्वावृधेन्यम् ॥१८॥
ऐश्वर्यको कामनाले हामी वैभवशाली इन्द्रदेवलाई आह्वान गर्दछौं। उनी प्रमादरहित भएर याजकका यज्ञले वृद्धि प्राप्त गर्दछन्।

एतोन्विन्द्रं स्तवाम सखायः स्तोम्यं नरम्। कृष्टीर्योविश्वा अभ्यस्त्येक इत् ॥१९
हे मित्र हो ! चाँडो आओ। सबै शत्रु परास्त गर्न सक्षम, स्तुत्य नायक इन्द्रदेवको हामी प्रार्थना गरौं।

अगोरुधाय गविषे द्युक्षाय दस्म्यं वचः। घृतात्स्वादीयो मधुनश्च वोचत ॥२०॥
हे याजक हो ! वध नगरेर गाईको संरक्षण गर्ने तेजसम्पन्न इन्द्रदेवलाई घिउभन्दा मिठो र स्वादिलो स्तुति वचन पाठ गर।

यस्यामितानि वीर्या३ न राधः पर्येतवे ज्योतिर्न विश्वमभ्यस्ति दक्षिणा ॥२१॥
इन्द्रदेव असीम शौर्यले सम्पन्न छन्। उनको सम्पत्ति कसैले प्राप्त गर्न सक्दैन। उनको दान प्रकाशजत्तिकै सबैका लागि उपलब्ध छ।

स्तुहीन्द्रं व्यश्ववदनूर्मिं वाजिनं यमम्। अर्यो गयं मंहमानं वि दाशुषे ॥२२॥
हे स्तोता हो ! अहिंसित शक्तिले सम्पन्न इन्द्रदेव समस्त जगत्लाई नियमित गराउँछन्। व्यश्व ऋषिले जस्तै उनको प्रार्थना गर। उनी दानीलाई प्रशंसनीय ऐश्वर्य प्रदान गर्दछन्।

एवा नूनमुप स्तुहि वैयश्व दशमं नवम्। सुविद्वांसं चर्कृत्यं चरणीनाम् ॥२३॥
हे विश्वमना ऋषि ! विद्वान् इन्द्रदेव मानिसभित्र नौ प्राणका अतिरिक्त दसौं प्राणजस्तै भएर रहन्छन्। यस्ता पूजनीय इन्द्रदेवको साधना गर।

वेत्था हि निर्ऋतीनां वज्रहस्त परिवृजम्। अहरहः शुन्ध्युः परिपदामिव ॥२४॥
जसरी शोधनकर्ताले सबै तिरका गतिशीलहरूलाई जानेका छन्, उसै गरी हे वज्रधारी ! तिमी निर्ऋतिहरूलाई नियन्त्रित गर्न जान्दछौ।

तदिन्द्राव आ भर येना दंसिष्ठ कृत्वने। द्विता कुत्साय शिश्नथो नि चोदय ॥
हे अत्यन्त कर्मशील इन्द्रदेव ! तिमी जुन रक्षणसाधनले सत्कर्म गर्नेलाई रक्षित गर्दछौ, जेले कुत्स ऋषिलाई रक्षा गर्नका लागि दुई शत्रुको वध गरेका थियौ, उसै रक्षासाधनले हामीलाई पनि सुरक्षा प्रदान गर।

तमु त्वा नूनमीमहे नव्यं दंसिष्ठ सन्यसे।
स त्वं नो विश्वा अभिमातीः सक्षणिः ॥२६॥
हे श्रेष्ठ कर्मशील इन्द्रदेव ! ऐश्वर्य प्राप्तिका लागि हामी स्तुति गर्दछौं। हाम्रा सबै शत्रु संहार गर।

य ऋक्षादंहसो मुचद्यो वार्यात्सप्त सिन्धुषु। वर्धदासस्य तुविनृम्ण नीनमः ॥
आफ्ना भक्तलाई निशाचर र दुष्कर्मीबाट मुक्त गर्ने, सात सरितालाई जल प्रदान गर्ने र मानिसलाई कमारो बनाउने अत्याचारी मार्ने इन्द्रदेवलाई हामी बारम्बार प्रणाम गर्दछौं।

यथा वरो सुषाम्णे सनिभ्य आवहो रयिम्। व्यश्वेभ्यः सुभगे वाजिनीवति ॥२८
हे वरिष्ठ वरु राजा ! तिमीले उहिले सुषाम नामका शासकको मुक्तिका लागि याचकलाई धन प्रदान गरेझैं व्यश्व ऋषिलाई पनि ऐश्वर्य प्रदान गर। हे उषादेवी ! तिमी अत्यन्त सौभाग्यशाली सम्पत्तिले सम्पन्न छ्यौ। हामीलाई यथोचित ऐश्वर्य प्रदान गर।

आ नार्यस्य दक्षिणा व्यश्वाँ एतु सोमिनः। स्थूरं च राधः शतवत्सहस्रवत् ॥२९॥
मानिसका हितैषि, सोमयुक्त वरु राजाले प्रदान गरेको दान, विशेष अश्वका पराक्रमले सम्पन्न व्यश्व ऋषिका सन्तानलाई प्राप्त होस्। सयौं वा हजारौं सङ्ख्यामा ऐश्वर्य पनि हाम्रै नजिक आऊन्।

यत्त्वा पृच्छादीजानः कुहया कुहयाकृते।
एषो अपश्रितो वलो गोमतीमव तिष्ठति ॥३०॥
मायारूपी पर्दा विनाश गराउने हे उषादेवी ! कसैले तिमीलाई वरु राजा कहाँ बस्दन् ? भनी सोधे भने शत्रुनाशक वरु राजा गोमती नदीका किनारमा बस्दछन् भन्नू।

[सूक्त – २५]

ऋषि – विश्वमना वैयश्व। देवता – मित्रावरुण विश्वेदेवा। छन्द – उष्णिक् गायत्री।

ता वां विश्वस्य गोपा देवा देवेषु यज्ञिया। ऋतावाना यजसे पूतदक्षसा ॥१॥
हे समस्त जगत्का पालक र देवताका उपास्य मित्र र वरुणदेव ! तिमीहरू यज्ञका संरक्षक र पावन शक्तिले सम्पन्न छौ। हे याजक हो ! यिनै देवताको उपासना गर।

**मित्रा तना न रथ्या३ वरुणो यश्च सुक्रतुः । सनातसुजाता तनया धृतव्रता ॥२॥**
सत्कर्ममा लागेका मित्र र वरुणदेव अदिति माताका पुत्र हुन् र व्रत धारण गर्दछन् । उनीहरू आफ्ना रथद्वारा सबैतिर गमन गर्दछन् ।

**ता माता विश्ववेदसासुर्याय प्रमहसा । मही जजानादितिर्ऋतावरी ॥३॥**
सत्य पालक महान् अदितिमाताले राक्षस संहार गर्नका लागि मित्रावरुण उत्पन्न गरिन् । उनीहरू दुवै समस्त विश्वका ज्ञाता र महान् तेजले सम्पन्न छन् ।

**महान्ता मित्रावरुणा सम्राजा देवावसुरा । ऋतावानावृतमा घोषतो बृहत् ॥४॥**
महान् मित्र र वरुणदेव अत्यन्त तेज तथा दिव्य गुणले सम्पन्न छन् । उनीहरू जीवनशक्ति प्रदान गर्ने र यज्ञको रक्षक भएर यज्ञलाई शोभा प्रदान गर्दछन् ।

**नपाता शवसो महः सूनू दक्षस्य सुक्रतू । सृप्रदानू इषो वास्त्वधि क्षितः ॥५॥**
मित्र र वरुणदेव श्रेष्ठ सामर्थ्य उत्पन्न गरेर त्यसैले रक्षा गर्दछन् । उनीहरू सत्कर्म गर्दै श्रेष्ठ दान गर्दछन् । उनीहरू अन्नले सम्पन्न ठाउँमा रहन्छन् ।

**सं या दानूनि येमथुर्दिव्याः पार्थिवीरिषः । नभस्वतीरा वां चरन्तु वृष्टयः ॥६॥**
हे मित्रावरुण ! तिमीहरू दिव्यलोक र पृथ्वीलाई धनधान्यले परिपूर्ण गराउँछौ । अन्तरिक्षबाट प्रवाहित हुने वर्षा तिमीहरूकै अधीनमा छ ।

**अधि या बृहतो दिवोऽभि यूथेव पश्यतः । ऋतावाना सम्राजा नमसे हिता ॥७॥**
हे यज्ञपथमा चल्ने मित्रावरुणदेव ! तिमीहरू तेजसम्पन्न भएर द्युलोकबाट हाम्रो उसै किसिमले पालन गर्दछौ, जसरी गोठालो आफ्ना गाईको राम्रो हेरचाह गर्दछ । तिमी विनम्र मानिसका हितैषि हौ ।

**ऋतावाना नि षेदतुः साम्राज्याय सुक्रतू । धृतव्रता क्षत्रिया क्षत्रमाशतुः ॥८॥**
मित्र र वरुणदेव सत्यका पालक भएर सत्कर्म गर्दै कुशलताका साथ शासन गर्छन् र आफैं सर्वोच्च स्थानमा विराजमान हुन्छन् । उनीहरू आफ्नो सङ्कल्प पालन गर्दै विपत्तिबाट मानिसलाई जोगाएर सामर्थ्य प्रदान गर्दछन् ।

**अक्ष्णश्चिद्गातुवित्तरानुल्बणेन चक्षसा । नि चिन्मिषन्ता निचिरा नि चिक्यतुः ॥९**
आँखाका क्षेत्रभित्र आउनुभन्दा पहिले नै स्पष्ट रूपले सबै प्राणीलाई जान्ने मित्रावरुण सबैका प्रेरक हुन् । उनीहरू असहनीय तेजले उहिलेदेखि नै सबैबाट पूजित छन् ।

**उत नो देव्यदितिरुरुष्यतां नासत्या । उरुष्यन्तु मरुतो वृद्धशवसः ॥१०॥**
सत्यका पालक दुवै अश्विनीकुमार, माता अदिति र शक्तिले समृद्ध मरुत्हरूले हाम्रो संरक्षण गरुन् ।

**ते नो नावमुरुष्यता दिवा नक्तं सुदानवः । अरिष्यन्तो नि पायुभिः सचेमहि ॥**
हे श्रेष्ठ दानी मरुत्हरू हो ! तिमीहरू नौकाजस्तै भएर रातदिन हाम्रो संरक्षण गर । हामी अहिंसित रहेर रक्षण साधनले सम्पन्न होऔं ।

**अघ्नते विष्णवे वयमरिष्यन्तः सुदानवे । श्रुधि स्वयावन्त्सिन्धो पूर्वचित्तये ॥**
हिंसा नगरीकन हामी श्रेष्ठ दानी विष्णुदेवलाई आहुति प्रदान गर्दछौं । हे स्वयं प्रवाहित सिन्धु ! हाम्रो बिन्ती सुन र हाम्रो कामना बुझ ।

**तद्वार्यं वृणीमहे वरिष्ठं गोपयत्यम् । मित्रो यत्पान्ति वरुणो यदर्यमा ॥१३॥**
मित्र, वरुण र अर्यमादेवले संरक्षण गर्ने सर्वश्रेष्ठ तथा वरणीय ऐश्वर्य तिमीहरूसित हामी याचना गर्दछौं ।

**उत नः सिन्धुरपां तन्मरुतस्तदश्विना । इन्द्रो विष्णुर्मीढ्वांसः सजोषसः ॥१४॥**
जलयुक्त सरिता, मरुत्गण र दुवै अश्विनीकुमारहरूले हाम्रा सम्पत्तिका संरक्षण गरुन् । यसका अतिरिक्त कामना पूरा गराउने र सँगसँगै निवास गर्ने देवताहरूले पनि हाम्रो ऐश्वर्य संरक्षित गरुन् ।

**ते हि ष्मा वनुषो नरोऽभिमातिं कयस्य चित् ।**
**तिग्मं न क्षोदः प्रतिघ्नन्ति भूर्णयः ॥१५॥**
पानीका तेज धाराले बोटबिरुवा नष्ट गरेझैं सम्माननीय र द्रुतगामी नायकले रिपुको अहङ्कार नष्ट गराउँछन् ।

अयमेक इत्था पुरूरु चष्टे वि विश्पतिः। तस्य व्रतान्यनु वश्चरामसि ॥१६॥
मित्र र वरुण दुईमध्येका एउटा मित्रदेवता समस्त जगत्लाई पोषण र हेरचाह गर्दछन्। हे याजक हो ! आफ्नो हितका लागि हामी उनकै नियममा चलौँ।

अनु पूर्वाण्योक्या साम्राज्यस्य सश्चिम। मित्रस्य व्रता वरुणस्य दीर्घश्रुत ॥१७॥
हामी सम्पूर्ण जगत्को कल्याण गर्ने सम्राट् वरुणदेवको नियम पालन गर्दछौँ र मित्र देवताका नियम पनि पालन गर्दछौँ।

परि यो रश्मिना दिवोऽन्तान्ममे पृथिव्याः। उभे आ पप्रौ रोदसी महित्वा ॥१८
मित्र देवले आफ्ना किरणले दिव्यलोक र पृथ्वी व्याप्त गरेका छन्। उनी र वरुणदेवले दुवै लोकलाई आफ्ना महिमाले पूर्ण गराएका छन्।

उदु ष्य शरणे दिवो ज्योतिरयंस्त सूर्यः। अग्निर्न शुक्रः समिधान आहुतः ॥१९
मित्र र वरुणदेव सूर्यदेवका स्थानमा आफ्नो दिव्य प्रकाश प्रकट गर्दछन्। त्यस बेला उनीहरू अग्निदेवजस्तै तेजले सम्पन्न भएर सबै तिरबाट बोलाइन्छन्।

वचो दीर्घप्रसद्मनीशे वाजस्य गोमतः। ईशे हि पित्वोऽविषस्य दावने ॥२०॥
हे याजक हो ! यस विशाल यज्ञमा स्तोत्र पाठ गर। मित्र देवता गाईले सम्पन्न अन्नका अधिष्ठाता हुन्। उनी दोषरहित अन्न हामीलाई प्रदान गर्न समर्थ छन्।

तत्सूर्यं रोदसी उभे दोषा वस्तोरुप ब्रुवे। भोजेष्वस्माँ अभ्युच्चरा सदा ॥२१॥
हामी सूर्यदेव र दुवै लोकको प्रार्थना गर्दछौँ। हे वरुणदेव ! हामीलाई भोज्य पदार्थ प्रदान गर्नका लागि सधैँ हाम्रा नजिक आऊ।

ऋज्रमुक्षण्यायने रजतं हरयाणे। रथं युक्तमसनाम सुषामणि ॥२२॥
उक्ष वंशीय शासक सुषामका पुत्र वरु नामका राजाले हामीलाई द्रुतगामी अश्व र सुनचाँदीले सजिएको रथ प्रदान गरे। त्यो शत्रुको आयु सिध्याउन सक्षम छ।

ता मे अश्व्यानां हरीणां नितोशना। उतो नु कृत्व्यानां नृवाहसा ॥२३॥
हामीलाई अश्व्यले शत्रु संहार गर्ने र नायकलाई वहन गर्ने दुई वटा द्रुतगामी घोडा दिए।

स्मदभीशू कशावन्ता विप्रा नविष्ठया मती। महो वाजिनावर्वन्ता सचासनम् ॥
गतिलो लगाम र चाबुक भएका, ज्ञानसम्पन्न दुई द्रुतगामी अश्व हामीले नयाँनौला प्रार्थनाले गर्दा एकै साथ प्राप्त गर्‍यौँ।

[सूक्त – २६]

ऋषि – वैयश्व आङ्गिरस। देवता – अश्विनीकुमार। छन्द – उष्णिक् गायत्री अनुष्टुप्।

युवोरु षू रथं हुवे सधस्तुत्याय सूरिषु। अतूर्तदक्षा वृषणा वृषण्वसू ॥१॥
बलशाली, सुखद धनवर्धक, अविनाशी, बल धारणकर्ता हे अश्विनीकुमार हो ! ज्ञानीका बीचमा संयुक्त भएर स्तुति गर्नका लागि हामी तिमीहरूका रथलाई आह्वान गर्दछौँ।

युवं वरो सुषाम्णे महे तने नासत्या। अवोभिर्याथो वृषणा वृषण्वसू ॥२॥
सत्यका पालक, शक्तिशाली, ऐश्वर्यवर्धक हे अश्विनीकुमार हो ! तिमीहरू सुषामलाई ऐश्वर्य प्रदान गर्नका लागि आएझैँ हाम्रा लागि रक्षण साधनसँग आओ भन्ने किसिमको स्तुति वरु राजाले गरुन्।

ता वामद्य हवामहे हव्येभिर्वाजिनीवसू। पूर्वीरिष इषयन्तावति क्षपः ॥३॥
शक्तिसम्पन्न, ऐश्वर्यवान् हे अश्विनीकुमार हो ! बिहानै प्रचुर धनधान्य प्राप्तिका लागि हामी आह्वान गर्दै तिमीहरूलाई आहुति प्रदान गर्दछौँ।

आ वां वाहिष्ठो अश्विना रथो यातु श्रुतो नरा।
उप स्तोमान्तुरस्य दर्शथः श्रिये ॥४॥
हे अश्विनीकुमार हो ! सर्वत्र भ्रमण गर्ने तिमीहरूको प्रसिद्ध रथ यता आओस्। तिमीहरू स्तुति गर्नेलाई ऐश्वर्य प्रदान गर्नका लागि प्रार्थना सुन।

जुहुराणा चिदश्विना मन्येथां वृषण्वसू। युवं हि रुद्रा पर्षथो अति द्विषः ॥५॥
हे धनवर्धक, शत्रुपीडक अश्विनीकुमार हो ! ईर्ष्यालु शत्रु नाश गर्दै अगाडि बढ।

दस्रा हि विश्वमानुषङ्मक्षूभिः परिदीयथः। धियञ्जिन्वा मधुवर्णा शुभस्पती॥
दर्शनीय र कान्तिमान् हे अश्विनीकुमार हो ! तिमीहरू आफ्नो कार्य कुशलतापूर्वक सम्पन्न गर्दछौ र द्रुतगामी अश्वद्वारा समस्त स्थानमा पुग्दछौ।

उप नो यातमश्विना राया विश्वपुषा सह। मघवाना सुवीरावनपच्युता॥७॥
धनसम्पन्न तथा गतिशील हे अश्विनीकुमार हो ! सबै प्राणीको पालन गर्नका लागि धनसम्पन्न भएर तिमीहरू हाम्रा नजिकै आओ।

आ मे अस्य प्रतीव्य१मिन्द्रनासत्या गतम्। देवा देवेभिरद्य सचनस्तमा॥८॥
हे इन्द्र ! हे सत्यपालक, दानदाता अश्विनीकुमार हो ! तिमीहरू देवताका साथ प्रचुर धनसम्पन्न भई हाम्रा यज्ञमा आओ।

वयं हि वां हवामह उक्षण्यन्तो व्यश्ववत्। सुमतिभिरुप विप्राविहा गतम्॥९॥
हे विद्वान् अश्विनीकुमार हो ! व्यश्व ऋषिको जस्तै हामी पनि ऐश्वर्य प्राप्तिका लागि आह्वान गर्दछौं। त्यसैले श्रेष्ठ ज्ञानले सम्पन्न भएर हाम्रा निकटमा आओ।

अश्विना स्वृषे स्तुहि कुवित्ते श्रवतो हवम्। नेदीयसः कूळयातः पणींरुत॥१०॥
हे व्यश्व ऋषि ! अश्विनीकुमारको स्तुति गर। उनीहरूले तिम्रो प्रार्थना अवश्य सुन्दछन्। उनीहरू दुवै नजिकै रहेका शत्रु र लोभी व्यापारीलाई नष्ट गराउँछन्।

वैयश्वस्य श्रुतं नरोतो मे अस्य वेदथः। सजोषसा वरुणो मित्रो अर्यमा॥११॥
सबैका नायक हे अश्विनीकुमार हो ! तिमीहरू दुवै व्यश्व ऋषिको प्रार्थना सुन र हाम्रा पनि स्तुति वचनमा ध्यान देओ। तिमीहरू दुवै, मित्रवरुण र अर्यमादेव आदि सबै सँगै यज्ञस्थलमा आओ।

युवादत्तस्य धिष्णया युवानीतस्य सूरिभिः। अहरहर्वृषणा मह्यं शिक्षतम्॥१२॥
हे स्तुति योग्य र कामना पूरा गराउने अश्विनीकुमार हो ! जुन ऐश्वर्य तिमीहरूले ज्ञानीका लागि प्रदान गरेका थियौ, त्यही ऐश्वर्य हामीलाई सधैं प्रदान गर।

यो वां यज्ञेभिरावृतोऽधिवस्त्रा वधूरिव। सपर्यन्ता शुभे चक्राते अश्विना॥१३॥
नौली दुलही सुन्दर आवरणमा छोपिएझैं जुन मानिस यज्ञमै खटिन्छन्, तिनीहरूको हेरविचार गर्ने दुवै अश्विनीकुमारले सधैं उनलाई खुसी गराउँछन्।

यो वामुरुव्यचस्तमं चिकेतति नृपाय्यम्। वर्तिरश्विना परि यातमस्मयू॥१४॥
हे अश्विनीकुमार हो ! तिमीहरूलाई अत्यन्त विशाल तथा श्रेष्ठ सुरक्षित आसन प्रदान गर्ने याजकका घरमा सधैं जाने आकाङ्क्षा गर्दछौं।

अस्मभ्यं सु वृषण्वसू यातं वर्तिर्नृपाय्यम्। विषुद्रुहेव यज्ञमूहथुर्गिरा॥१५॥
धनवर्षा गराउने हे अश्विनीकुमार हो ! हामीलाई नेतृत्व प्रदान गर्ने व्यवहार देओ। व्याधिका लागि बाणजस्ता रोगनाशक वाणीले यज्ञलाई ऊर्ध्वगति प्रदान गर्दछ।

वाहिष्ठो वां हवानां स्तोमोदूतो हुवन्नरा। युवाभ्यां भूत्वश्विना॥१६॥
हे नायक हो ! तिमीहरूको आह्वान गर्नका लागि ठूलो मात्रामा पठाएका स्तोत्रले तिमीहरूलाई दूतझैं बोलाओस् र त्यो तिमीहरूलाई प्रिय लागोस्।

यददो दिवो अर्णव इषो वा मदथो गृहे। श्रुतमिन्मे अमर्त्या॥१७॥
हे अविनाशी अश्विनीकुमार हो ! तिमीहरू दुवै चाहे दिव्यलोकमा होओ वा समुद्रमा अथवा आफ्ना उपासकका घरमा रहेर आनन्द मनाउँदै गरेका होओ, हाम्रो पुकारमाथि निश्चित रूपले ध्यान दिएर शीघ्र नै आओ।

उत स्या श्वेतयावरी वाहिष्ठा वां नदीनाम्। सिन्धुर्हिरण्यवर्तनिः॥१८॥
हे अश्विनीकुमार हो ! सुनजस्तै कान्तिमान, पवित्र जल भएको श्वेतयावरी नदीको प्रवाहका प्रार्थनाले हामी तिमीहरूलाई आह्वान गर्दछौं।

स्मदेतया सुकीर्त्याश्विना श्वेतया धिया। वहेथे शुभ्रयावाना॥१९॥
हे अश्विनीकुमार हो ! शुभ्र वर्ण भएको, श्रेष्ठ कीर्तिले युक्त कल्याणकारी श्वेतयावरी नदीको धारा तिमीहरू प्रवाहित गराओ।

युक्ष्वा हि त्वं रथासहा युवस्व पोष्या वसो।
आन्नो वायो मधु पिबास्माकं सवना गहि ॥२०॥

सबैलाई पालन गर्ने हे वायु ! रथ तान्ने दुई वटा बलिष्ठ अश्व रथमा जोतेर तिमी हाम्रा यस यज्ञमा आऊ र मधुर सोमरस पान गर।

तव वायवृतस्पते त्वष्टुर्जामातरद्भुत। अवांस्या वृणीमहे ॥२१॥

सत्कर्मका पालक हे वायु ! तिमी त्वष्टाका ज्वाइँ हौ। हामी तिम्रा रक्षणसाधनको कामना गर्दछौँ।

त्वष्टुर्जामातरं वयमीशानं राय ईमहे। सुतावन्तो वायुं द्युम्ना जनासः ॥२२॥

त्वष्टा देवताका ज्वाइँ, धनले सम्पन्न वायुदेवतलाई हामी धन प्राप्तिका लागि स्तुति गर्दछौँ। उनका कृपाले हामी धनधान्यले सम्पन्न बनौँ।

वायो याहि शिवा दिवो वहस्वा सुस्वश्व्यम्। वहस्व महः पृथुपक्षसा रथे ॥२३

हे वायुदेवता ! तिमी विशाल अश्वसमूहका माझबाट छानेर दुई वटा अत्यन्त बलिष्ठ अश्व आफ्ना रथमा जोत्दछौ। हे महान् वायु ! हितकारी साधनसँग हाम्रा नजिकै आऊ।

त्वां हि सुप्सरस्तमं नृषदनेषु हूमहे। ग्रावाणं नाश्वपृष्ठं मंहना ॥२४॥

सौन्दर्यले सम्पन्न हे वायुदेव ! तिमी आफ्ना महानताले सबै ठाउँमा विद्यमान रहन्छौ। हामी आफ्ना यज्ञमा तिमीलाई ग्रावालाई झैँ आह्वान गर्दछौँ।

स त्वं नो देव मनसा वायो मन्दानो अग्रियः। कृधि वाजाँ अपो धियः ॥२५॥

देवताहरूका अगुवा हे वायु ! तिमी अन्तःकरणदेखि नै प्रसन्न भएर हामीलाई अन्न, जल र सद्बुद्धि प्रदान गर।

[सूक्त - २७]

ऋषि - मनु वैवस्वत। देवता - विश्वेदेवा। छन्द - प्रगाथ।

अग्निरुक्थे पुरोहितो ग्रावाणो बर्हिरध्वरे।
ऋचा यामि मरुतो ब्रह्मणस्पतिं देवाँ अवो वरेण्यम् ॥१॥

स्तुतिले यज्ञ सम्पन्न गर्न पुरोहित, अग्नि, ग्रावा र कुशआसन आदि स्थापित छन्। हे मरुत्‌हरू हो ! हे ब्रह्मणस्पतिदेव ! हे देवताहरू हो ! हामी वेदमन्त्रले तिमीहरूसित श्रेष्ठ रक्षणको कामना गर्दछौँ।

आ पशुं गासि पृथिवीं वनस्पतीनुषासा नक्तमोषधीः।
विश्वे च नो वसवो विश्ववेदसो धीनां भूत प्रावितारः ॥२॥

हे अग्निदेव ! उषाकाल र रातका समयमा पशु, जमिन, बोटबिरुवा र श्रेष्ठ औषधि हामीलाई प्रदान गर। समस्त जगत्‌का ज्ञाता हे वसु हो ! हाम्रा कल्याणकारी बुद्धिलाई संरक्षण गर।

प्र सू न एत्वध्वरोऽ३ ग्ना देवेषु पूर्व्यः।
आदित्येषु प्र वरुणे धृतव्रते मरुत्सु विश्वभानुषु ॥३॥

अग्निदेव, व्रतशील वरुणदेव, सर्वव्यापी प्रकाशवान् मरुत्‌गण र अन्य देवताका समीप हाम्रो यो प्राचीन यज्ञ कुशलताका साथ पुगोस्।

विश्वे हि ष्मा मनवे विश्ववेदसो भुवन्वृधे रिशादसः।
अरिष्टेभिः पायुभिर्विश्ववेदसो यन्ता नोऽवृकं छर्दिः ॥४॥

समस्त विश्वलाई जान्ने र शत्रु विनाश गर्ने देवताहरूले मानिसलाई समृद्ध गराऊन्। चिरस्थायी रक्षणसाधनले संरक्षण गरुन् र हामीलाई सुरक्षित आवास प्रदान गरुन्।

आ नो अद्य समनसो गन्ता विश्वे सजोषसः।
ऋचा गिरा मरुतो देव्यदिते सदने पस्त्ये महि ॥५॥

समान विचार भएका हे विश्वेदेवताहरू हो ! हाम्रा वाणीबाट प्रकट भएका ऋचाले प्रसन्न भएर तिमीहरू सङ्गठित रूपले हाम्रा निकट आओ। हे महान् अदिति देवी र मरुत्‌हरू हो ! तिमीहरू हाम्रा यज्ञमा आएर आसीन होओ।

अभि प्रिया मरुतो या वो अश्व्या हव्या मित्र प्रयाथन।
आ बर्हिरिन्द्रो वरुणस्तुरा नर आदित्यासः सदन्तु नः ॥६॥

शत्रु विजय गर्नका लागि हतारिने हे ऋभु, मरुत्, इन्द्र, वरुण र आदित्य आदि देवताहरू हो ! आ-आफ्ना प्रिय अश्वमा आहुति ग्रहण गर्नका लागि यस यज्ञमण्डपमा आओ।

वयं वो वृक्तबर्हिषो हितप्रयस आनुषक्।
सुतसोमासो वरुण हवामहे मनुष्वदिद्धाग्नयः ॥७॥

हे वरुणदेव ! मनुले जस्तै सोमरस पेलेर यज्ञको अग्नि प्रज्वलित गर्दै हामी आहुति प्रदान गर्दछौं। तिम्रा निम्ति आसन बिछाएर बारम्वार आह्वान गर्दछौं।

आ प्र यात मरुतो विष्णो अश्विना पूषन्माकीनया धिया।
इन्द्र आ यातु प्रथमः सनिष्युभिर्वृषा यो वृत्रहा गृणे ॥८॥

हे मरुत्‌गण, विष्णु, पूषा तथा दुवै अश्विनीकुमार हो ! प्रार्थनाले प्रभावित भएर हाम्रा नजिकै आओ। शक्तिशाली वृत्रहन्ता हे इन्द्रदेव ! तिमी आफ्ना सहचरसँगै हाम्रा यज्ञमा सबैभन्दा पहिले आऊ।

वि नो देवासो अद्रुहोऽच्छिद्रं शर्म यच्छत।
न यद्दूराद्वसवो नू चिदन्तितो वरूथमादधर्षति ॥९॥

कसैसित शत्रुता नगर्ने हे देवता हो ! तिमीहरू सबै मानिसलाई आवास दिन्छौ। त्यसैले हामीलाई त्रुटिरहित र नष्ट नहुने खालका आवास प्रदान गर।

अस्ति हि वः सजात्यं रिशादसो देवासो अस्त्याप्यम्।
प्र णः पूर्वस्मै सुविताय वोचत मक्षू सुम्नाय नव्यसे ॥१०॥

हे देवता हो ! तिमीहरू हिंसक प्रवृत्ति हुनेका लागि शत्रु हौ। तिमीहरूमा सानोठूलोको भेदभाव छैन। हाम्रो उन्नति र नयाँ सुखका लागि सक्दो उपदेश देऔ।

इदा हि व उपस्तुतिमिदा वामस्य भक्तये।
उप वो विश्ववेदसो नमस्युराँ असृक्ष्यन्यामिव ॥११॥

सबै पदार्थका ज्ञाता हे देवताहरू हो ! हामी अन्न आदि श्रेष्ठ ऐश्वर्यको कामना गर्दै भावपूर्ण प्रार्थना गर्दछौं।

उदु ष्य वः सविता सुप्रणीतयोऽस्थादूर्ध्वो वरेण्यः।
नि द्विपादश्चतुष्पादो अर्थिनोऽविश्रन्पतयिष्णवः ॥१२॥

हे देवताहरू हो ! वरण गर्न योग्य, महान् सूर्यदेव तिमीहरूका माझमा उदाउँदा सबै मानिस र पशुपक्षी आआफ्ना कर्ममा लागेर कामना पूरा गर्दछन्।

देवन्देवं वोऽवसे देवन्देवमभिष्टये।
देवन्देवं हुवेम वाजसातये गृणन्तो देव्या धिया ॥१३॥

हामी दिव्य स्तोत्रका मध्यमबाट आफ्नो सुरक्षा, अभीष्ट प्राप्ति र अन्न या बल प्राप्त गर्नका लागि दिव्य शक्ति सम्पन्न देवताहरूलाई आह्वान गर्दछौं।

देवासो हि ष्मा मनवे समन्यवो विश्वे साकं सरातयः।
ते नो अद्य ते अपरं तुचे तु नो भवन्तु वरिवोविदः ॥१४॥

शत्रुमाथि रिस देखाउने हे देवताहरू हो ! तिमीहरू सबै एक साथ भएर म मनुलाई ऐश्वर्य प्रदान गर। हामी र हाम्रा सन्तानलाई प्रतिदिन श्रेष्ठ मार्ग प्रदान गर।

प्र वः शंसाम्यद्रुहः संस्थ उपस्तुतीनाम्।
न तं धूर्तिर्वरुण मित्र मर्त्यं यो वो धामभ्योऽविधत् ॥१५॥

मित्रता गर्ने हे देवता हो ! यज्ञस्थलमा हामी तिम्रो प्रार्थना गर्दछौं। हे मित्र र वरुणदेव ! तिमीहरूको जस्तो तेज धारण गर्ने मानिसलाई कसैले विनाश गर्न सक्दैन।

प्र स क्षयं तिरते वि महीरिषो यो वो वराय दाशति।
प्र प्रजाभिर्जायते धर्मणस्पर्यरिष्टः सर्व एधते ॥१६॥

हे देवता हो ! वरिष्ठता ग्रहण गर्नका लागि तिमीहरूलाई हवि प्रदान गर्ने व्यक्तिले आफ्नो घर पौष्टिक अन्न सामग्रीले समृद्ध पार्दछन्। तिनीहरू धर्मको आचरण गर्दै प्रजा वा सन्तानबाट सम्पन्न हुन्छन्। उनलाई कसैले हताहत गर्न सक्दैन।

ऋते स विन्दते युधः सुगेभिर्यात्यध्वनः।
अर्यमा मित्रो वरुण सरातयो यं त्रायन्ते सजोषसः ॥१७॥

श्रेष्ठ दानी मित्र, वरुण र अर्यमा देवताले संरक्षण गरेका व्यक्तिले युद्ध नगरीकनै पनि ऐश्वर्य प्राप्त गर्दछन्। उनीहरू प्रगति गर्दै सन्मार्गगामी हुन्छन्।

अज्रे चिदस्मै कृणुथा न्यञ्चनं दुर्गे चिदा सुसरणम्।
एषा चिदस्मादशनिः परो नु सास्रेधन्ती वि नश्यतु ॥१८॥
हे देवताहरू हो ! शत्रुको अजेय र दुर्गम किल्लामा हामीलाई सुगमतापूर्वक प्रवेश गरेर जित्ने योग्य बनाओ। शत्रुका वज्रले हाम्रा वीरलाई क्षति नगरी आफैं विनाश होऊन्।

यदद्य सूर्य उद्यति प्रियक्षत्रा ऋतं दध।
यन्निम्रुचि प्रबुधि विश्ववेदसो यद्वा मध्यन्दिने दिवः ॥१९॥
शौर्यसित प्रेम गर्ने सर्वज्ञाता हे देवता हो ! तिमीहरू सूर्योदय, सूर्यास्त र मध्याह्न कालका हरेक समयमा हाम्रा लागि हितकारी होओ।

यद्वाभिपित्वे असुरा ऋतं यते छर्दिर्येम वि दाशुषे।
वयं तद्वो वसवो विश्ववेदस उप स्थेयाम मध्य आ ॥२०॥
सज्जन व्यक्तिलाई जीवनशक्ति प्रदान गर्ने हे देवता हो ! तिमीहरूलाई आहुति प्रदान गर्ने दातालाई श्रेष्ठ आवास प्रदान गर। हे सर्वज्ञाता वसुहरू हो ! तिमीहरूका निकट हामी आसीन होऔं।

यदद्य सूर उदिते यन्मध्यन्दिन आतुचि।
वामं धत्थ मनवे विश्ववेदसो जुह्वानाय प्रचेतसे ॥२१॥
हे सर्वज्ञ देवताहरू हो ! सूर्योदय, सूर्यास्त र मध्याह्न समयमा यजन गर्ने विद्वान् मनुलाई तिमीहरू श्रेष्ठ ऐश्वर्य प्रदान गर।

वयं तद्वः सम्राज आ वृणीमहे पुत्रो न बहुपाय्यम्।
अश्याम तदादित्या जुह्वतो हविर्येन वस्योऽनशामहै ॥२२॥
हे ओजस्वी देवता हो ! पुत्रले आफ्ना पितासित मागेझैं तिमीहरूसित हामी सम्पत्ति याचना गर्दछौं। त्यो अनेकौं किसिमले पोषण गर्ने होस्। हे आदित्य हो ! हवि प्रदान गर्ने हामी याजक उसै सम्पत्तिले हर्ष प्राप्त गरौं।

## [सूक्त – २८]

ऋषि – मनु वैवस्वत। देवता – विश्वेदेवा। छन्द – गायत्री पुर उष्णिक्।

ये त्रिंशति त्रयस्परो देवासो बर्हिरासदन्। विदन्नह द्वितासनन् ॥१॥
हामीले दिएको आहुति ग्रहण गर्नका लागि कुशका आसनमा विराजमान भएका तेत्तीस करोड देवताले हाम्रो भावना बुझेर हामीलाई दुई किसिमको धन प्रदान गरे।

वरुणो मित्रो अर्यमा स्मद्रातिषाचो अग्नयः। पत्नीवन्तो वषट्कृताः ॥२॥
वरुण, मित्र, अर्यमा र अग्निदेव हाम्रो हवि ग्रहण गर्नका लागि आआफ्ना शक्तिसहित उपस्थित भएर आतिथ्य स्वीकार गरुन्।

ते नो गोपा अपाच्यास्त उदक्त इत्था न्यक्। पुरस्तात्सर्वया विशा ॥३॥
देवता र उनीहरूका सहचरले पूर्व, पश्चिम, उत्तर, दक्षिण, माथि र तलजस्ता सबै दिशाबाट हामीलाई सुरक्षा प्रदान गरुन्।

यथा वशन्ति देवास्तथेदसत्तदेषां नकिरा मिनत्। अरावा च न मर्त्यः ॥४॥
देवताहरू कामना गरेको वस्तु प्राप्त गर्दछन्। उनीहरूको इच्छा कसैले रोक्न सक्दैन।

सप्तानां सप्त ऋष्टयः सप्त द्युम्नान्येषाम्। सप्तो अधि श्रियो धिरे ॥५॥
सात मरुत्हरूका सातै किसिमका हतियार र सातै किसिमका कवच भिन्नभिन्न छन् र सबै तेजस्वी स्वरूप भएका छन्।

## [सूक्त – २९]

ऋषि – मनु वैवस्वत कश्यप मारीच। देवता – विश्वेदेवा। छन्द – द्विपदा विराट्।

बभ्रुरेको विषुणः सूनरो युवाञ्ज्यङ्क्ते हिरण्ययम् ॥१॥
ओजस्वी, सर्वत्र गमन गर्ने, श्रेष्ठ, नित्य नवीन, शोभासम्पन्न, रात्रिका नायक, स्वर्णिम रूपमा उत्पन्न भए।

योनिमेक आ ससाद द्योतनोऽन्तर्देवेषु मेधिरः ॥२॥
अग्निदेवता आलोकयुक्त विद्वान् छन् र उनी आफ्नो मध्य स्थानमा विराजमान छन्।

**वाशीमेको बिभर्ति हस्त आयसीमन्तर्देवेषु निध्रुविः ॥३॥**
त्वष्टादेव आफ्ना हातमा फलामको हतियार लिएर देवताहरूका माझमा बसेका छन्।

**वज्रमेको बिभर्ति हस्त आहितं तेन वृत्राणि जिघ्नते ॥४॥**
इन्द्रदेवता आफ्ना हातमा वज्र धारण गर्दछन् र त्यसका प्रहारले शत्रु संहार गर्दछन्।

**तिग्ममेको बिभर्ति हस्त आयुधं शुचिरुग्रो जलाषभेषजः ॥५॥**
जलद्वारा रोग निवारण गर्ने पवित्र र भीषण रुद्रदेवले हातमा तीखो हतियार लिन्छन्।

**पथ एकः पीपाय तस्करो यथाँ एष वेद निधीनाम् ॥६॥**
बाटो सुरक्षित गराउने पूषादेवताले चोरझैं लुकेका सबै ऐश्वर्य जानेका छन्।

**त्रीण्येक उरुगायो वि चक्रमे यत्र देवासो मदन्ति ॥७॥**
तीन पाइलाले तीनै लोक ओगट्ने विष्णुदेव स्तुति योग्य छन्। यिनका काम देखेर सबै देवताहरू खुसी हुन्छन्।

**विभिर्द्वा चरत एकया सह प्र प्रवासेव वसतः ॥८॥**
अश्विनीकुमारहरू उषासित एउटै रथमा विराजमान भएर प्रवासी डुलेझैं सबै ठाउँमा विचरण गर्दछन्।

**सदो द्वा चक्राते उपमा दिवि सम्राजा सर्पिरासुती ॥९॥**
दिव्यलोकमा निवास गर्ने अत्यन्त तेजस्वी मित्रावरुण देवता घिउको आहुतिले युक्त भई प्रकाशित छन्।

**अर्चन्त एके महि साम मन्वत तेन सूर्यमरोचयन् ॥१०॥**
प्रार्थना गर्ने स्तोताहरू सामगान गर्दै उपासना गरेर सूर्यदेवलाई आलोकित गर्दछन्।

## [सूक्त – ३०]

**ऋषि** – मनु वैवस्वत। **देवता** – विश्वेदेवा। **छन्द** – गायत्री पुर उष्णिक् बृहती अनुष्टुप्।

**नहि वो अस्त्यर्भको देवासो न कुमारकः। विश्वे सतोमहान्त इद् ॥१॥**
हे देवता हो ! तिमीहरूमध्ये न कुनै बालक छ, न किशोर। तिमीहरू सबै महान् छौ।

**इति स्तुतासो असथा रिशादसो ये स्थ त्रयश्च त्रिंशच्च। मनोर्देवा यज्ञियासः ॥**
हे देवता हो ! तिमीहरू हिंसक प्रवृत्तिका व्यक्तिका विनाशक हौ र विद्वान्हरूका पूजनीय छौ। तिमीहरू तेत्तीस देवताका रूपमा सम्मानित छौ।

**ते नस्त्राध्वं तेऽवत त उ नो अधि वोचत।**
**मा नः पथः पित्र्यान्मानवादधि दूरं नैष्ट परावतः ॥३॥**
हे देवताहरू हो ! तिमीहरू संरक्षण र पोषण प्रदान गर्दै हामीलाई उपदेश गर। हामीलाई पुर्खाअनुसार मानिसका उचित मार्गमा अघि बढाओ। विपरीत या पर जान नदेओ।

**ये देवासो इह स्थन विश्वे वैश्वानरा उत।**
**अस्मभ्यं शर्म सप्रथो गवेऽश्वाय यच्छत ॥४॥**
सबैलाई सन्मार्गमा डोऱ्याउने हे देवता हो ! नजिकै तिमीहरू उपस्थित भएर हामीलाई गाई, अश्वसहितका विविध ऐश्वर्य प्रदान गर।

## [सूक्त – ३१]

**ऋषि** – मनु वैवस्वत। **देवता** – यज्ञ स्तुति दम्पती। **छन्द** – गायत्री अनुष्टुप् पंक्ति।

**यो यजाति यजात इत्सुनवच्च पचाति च। ब्रह्मेदिन्द्रस्य चाकनत् ॥१॥**
आफू यज्ञ गर्ने र अर्कालाई गराउने, सोमरस पेल्ने र अर्कालाई प्रेरित गर्ने ब्राह्मणले इन्द्रदेवबाट आत्मज्ञान प्राप्त गर्दछन्।

**पुरोळाशं यो अस्मै सोमं ररत आशिरम्। पादित्तं शक्रो अंहसः ॥२॥**
पुरोडाश र गाईको दुध मिसाएको सोमरस इन्द्रदेवलाई प्रदान गर्ने याजकलाई देवताले दुष्कर्मबाट जोगाउँछन्।

**तस्य द्युमाँ असद्रथो देवजूतः स शूशुवत्। विश्वा वन्वन्नमित्रिया ॥३॥**
याजकहरू देवताले प्रदान गरेको तेजस्वी रथ प्राप्त गर्दछन्। उनीहरू शत्रु परास्त गरेर राम्रैसित समृद्धिशाली हुन्छन्।

अस्य प्रजावती गृहेऽसश्चन्ती दिवदिवे। इडा धेनुमती दुहे ॥४॥

याजकका घरमा प्रजा र स्थिरतायुक्त मतिरूपी गाईले ऐश्वर्य दोहन गराउँछन्।

या दम्पती समनसा सुनुत आ च धावतः। देवासो नित्ययाशिरा ॥५॥

हे देवता हो ! विचार मिलेका पतिपत्नी सोमरस पेलेर शुद्ध गर्दछन्। उनीहरू प्रतिदिन देवतालाई गाईको दुध मिसाएको सोम अर्पित गर्दछन्।

प्रति प्राशव्याँ इतः सम्यञ्चा बर्हिराशाते। न ता वाजेषु वायतः ॥६॥

विचार मिल्ने दम्पतीले यज्ञ गरेर सधैँ पोषक आहार पाउँछन्। उनीहरूलाई कहिल्यै पनि अन्नबाट विमुख हुनुपर्दैन।

न देवानामपि ह्नुतः सुमतिं न जुगुक्षतः। श्रवो बृहद्विवासतः ॥७॥

असल विचारका दम्पतीले देवताको उपेक्षा गर्दैनन् र विवेक नै गुमउँदैनन्। त्यसैले तिनले महान् कीर्ति वरण गर्दछन्।

पुत्रिणा ता कुमारिणा विश्वमायुर्व्यश्नुतः। उभा हिरण्यपेशसा ॥८॥

तिनीहरू सुनका गहनाले सजिएर सन्तानसँगै खुसीका साथ पूरा आयु बाँच्दछन्।

वीतिहोत्रा कृतद्वसू दशस्यन्तामृताय कम्।

समूधो रोमशं हतो देवेषु कृणुतो दुवः ॥९॥

नित्यप्रति देवताको प्रार्थना गर्ने दम्पतीले ऐश्वर्य र हर्षप्रदायक अन्न दान गर्दछन्। गाई, भेडा आदि पशुले समृद्ध भएर देवताको उपासना गर्दै अमरत्व प्राप्त गर्दछन्।

आ शर्म पर्वतानां वृणीमहे नदीनाम्। आ विष्णोः सचाभुवः ॥१०॥

पहाड र झरनामा रहेको सुख र विष्णुदेवसित रहँदाको सुख हामी याचना गर्दछौँ।

ऐतु पूषा रयिर्भगः स्वस्ति सर्वधातमः। उरुरध्वा स्वस्तये ॥११॥

पूषा देवता ऐश्वर्य प्रदान गर्दछन्। उनी अत्यन्त हितकारी भएर सबैलाई धारण गर्दछन्। उनी हाम्रा नजिकै आउनाले जीवनको विस्तृत भाग हाम्रा लागि हितकारी हुनेछ।

अरमतिरनर्वणो विश्वो देवस्य मनसा। आदित्यानमनेह इत् ॥१२॥

शत्रुबाट परास्त नहुने पूषादेवलाई सबै मानिस साँचो मनले प्रार्थना गर्दछन्। आदित्यगण प्रसन्न भएका साधकको पाप नष्ट हुन्छ।

यथा नो मित्रो अर्यमा वरुणः सन्ति गोपाः। सुगा ऋतस्य पन्थाः ॥१३॥

मित्र, वरुण र अर्यमा देवताले संरक्षण गर्दा सन्मार्गमा चल्ने हाम्रो जीवन सरल हुन्छ।

अग्निं वः पूर्व्यं गिरा देवमीळे वसूनाम्।

सपर्यन्तः पुरुप्रियं मित्रं न क्षेत्रसाधसम् ॥१४॥

हे देवता हो ! हामी स्तोताहरू ऐश्वर्यका निम्ति तिमीहरूमध्ये प्रमुख अग्निदेवको प्रार्थना गर्दछौँ। तिमीहरू अनेकौँका प्रियपात्र र सखा भएर यज्ञक्षेत्रलाई सिद्ध गराउँछौ।

मक्षू देववतो रथः शूरो वा पृत्सु कासु चित्।

देवानां य इन्मनो यजमान इयक्षत्यभीदयज्वनो भुवत् ॥१५॥

लडाइँका क्षेत्रमा योद्धा तीव्र गतिले अगाडि बढेझैँ देवताहरूले प्रिय मानेका भक्तको जीवनरूपी रथ द्रुतगतिले अगाडि बढ्दछ। साँचो मनले देवताको उपासना गर्ने याजकले यज्ञ नगर्ने व्यक्तिलाई परास्त गर्दछ।

न यजमान रिष्यसि न सुन्वान न देवयो।

देवानां य इन्मनो यजमान इयक्षत्यभीदयज्वनो भुवत् ॥१६॥

हे याजक हो ! हामी सोमरस पेलेर देवताको प्रार्थना गर्नेहरूको कहिल्यै विनाश हुँदैन। साँचो मनले देवताको उपासना गर्ने याजकले यज्ञ नगर्ने व्यक्तिलाई परास्त गर्दछ।

नकिष्टं कर्मणा नशन्न प्र योषन्न योषति।

देवानां य इन्मनो यजमान इयक्षत्यभीदयज्वनो भुवत् ॥१७॥

देवताको उपासना साँचो लगनका साथ गर्ने यजमान आफ्ना कर्तव्यबाट च्युत हुँदैन, न त उसलाई कसैले धनबाट पर हटाउन सक्दछ। यिनीहरू स्वयं भ्रष्ट पनि हुँदैनन्। त्यसको विपरीत उसले यज्ञ नगर्ने व्यक्तिलाई परास्त गर्दछ।

असदत्र सुवीर्यमुत त्यदाश्वश्व्यम्।
देवानां य इन्मनो यजमान इयक्षत्यभीदयज्वनो भुवत् ॥१८॥
साँचो लगनले उपासना गर्ने यजमान देवताद्वारा श्रेष्ठ शक्ति र अश्व प्राप्त गर्दछन्। साँचो मनले देवताको उपासना गर्ने याजकले यज्ञ नगर्ने व्यक्तिलाई परास्त गर्दछ।

[सूक्त - ३२]

ऋषि – मेधातिथि काण्व। देवता – इन्द्र। छन्द – गायत्री।

प्र कृतान्यृजीषिणः कण्वा इन्द्रस्य गाथया। मदे सोमस्य वोचत ॥१॥
हे कण्व वंशीय ऋषिहरू हो ! इन्द्रदेवले सोमरस पान गरिसकेपछि आनन्दित भएर गरेका कामको गुणगान गर।

यः सृबिन्दमनर्शनिं पिप्रुं दासमहीशुवम्। वधीदुग्रो रिणन्नपः ॥२॥
पानीको धारो प्रवाहित गराउने शक्तिशाली इन्द्रदेवले सृबिन्द, अनर्शनी, पिप्रु, अहीशुव र दास आदि समस्त शत्रु संहार गरे।

न्यर्बुदस्य विष्टपं वर्ष्माणं बृहतस्तिर। कृषे तदिन्द्र पौंस्यम् ॥३॥
हे इन्द्रदेव ! अत्यन्त विशालकाय अर्बुदका किल्ला भत्काऊ। यस्तो वीरतापूर्ण कार्य तिमी नै सम्पन्न गर्न सक्दछौ।

प्रति श्रुताय वो धृषत्तूर्णाशं न गिरेरधि। हुवे सुशिप्रमूतये ॥४॥
हे याजक हो ! बादलबाट पानीको आशा गरेझैं हामी आफ्नो सुरक्षाका लागि शत्रु संहारक, मुकुटधारी इन्द्रदेवको स्तुति गर्दछौं।

स गोरश्वस्य वि व्रजं मन्दानः सोम्येभ्यः। पुरं न शूर दर्षसि ॥५॥
हे पराक्रमी इन्द्रदेव ! तिमी हर्षित भएर सोम पेल्नेहरूका लागि गाई र अश्वका आवास खोलिदिन्छौ। तिमीले शत्रुका सहरका ढोकाहरू पनि खोलेका थियौ।

यदि मे रारणः सुत उक्थे वा दधसे चनः। आरादुप स्वधा गहि ॥६॥
हामीले पेलेको सोमरस र स्तुति वचनको तिमी आशा गर्दछौ भने, हामीलाई पोषक अन्न प्रदान गर्नका लागि धेरै परबाट पनि यज्ञस्थलमा आऊ।

वयं घा ते अपि ष्मसि स्तोतार इन्द्र गिर्वणः। त्वं नो जिन्व सोमपाः ॥७॥
सोमरस पिएर सन्तुष्ट हुने, प्रशंसा गर्न योग्य हे इन्द्रदेव ! हामी तिम्रो स्तुति गर्दछौं। हामीलाई तिमी सन्तुष्टि प्रदान गर।

उत नः पितुमा भर संरराणो अविक्षितम्। मघवन्भूरि ते वसु ॥८॥
हे धनवान् इन्द्रदेव ! तिमी प्रसन्न भएर हामीलाई कहिल्यै क्षय नहुने ऐश्वर्य प्रदान गर, किनभने तिमीसित अपार सम्पत्ति छ।

उत नो गोमतस्कृधि हिरण्यवतो अश्विनः। इळाभिः सं रभेमहि ॥९॥
हे इन्द्रदेव ! हामीलाई गाई, अश्व, स्वर्ण र धनधान्यले सम्पन्न बनाऊ, त्यो प्राप्त गरेर हामी हर्षित होऔं।

बृबदुक्थं हवामहे सृप्रकरस्नमूतये। साधु कृण्वन्तमवसे ॥१०॥
सम्पूर्ण जगत्को संरक्षणका लागि आफ्ना भुजा फैलाउने र सत्कर्म गर्ने उनै इन्द्रदेवको सर्वत्र गुणगान गरिन्छ, हामी पनि आह्वान गर्दछौं।

यः संस्थे चिच्छतक्रतुरादीं कृणोति वृत्रहा। जरितृभ्यः पुरूवसुः ॥११॥
युद्धक्षेत्रमा अनेकौं वीरतापूर्ण कार्य गर्ने इन्द्रदेव वृत्रको वध गर्दछन् र अन्य शत्रु पनि संहार गर्दछन्। उनी प्रार्थना गर्नेलाई प्रचुर ऐश्वर्य प्रदान गर्दछन्।

स नः शक्रश्चिदा शकद्दानवाँ अन्तराभरः। इन्द्रो विश्वाभिरूतिभिः ॥१२॥
सामर्थ्यवान् र दानदाता इन्द्रदेवले हामीलाई बलवान् बनाऊन्। उनले आफ्नो संरक्षण शक्तिद्वारा हामीलाई आन्तरिक शक्ति प्रदान गरुन्।

यो रायो३ वनिर्महान्त्सुपारः सुन्वतः सखा। तमिन्द्रमभि गायत ॥१३॥
हे मानिस हो ! प्रचुर धन भएका, संरक्षण गर्ने र आपद्बाट राम्ररी पार लगाउने इन्द्रदेव यजन गर्नेहरूका सखा हुन्। तिमीहरू यिनै इन्द्रदेवको गुणगान गर।

**आयन्तारं महि स्थिरं पृतनासु श्रवोजितम्। भूरेरीशानमोजसा ॥१४॥**
हे स्तोता हो ! सङ्ग्राममा अडिग रहने, वैभव जित्ने र आफ्ना ओजले अनन्त शत्रुमाथि अधिकार र नियन्त्रण गर्ने इन्द्रदेवको प्रार्थना गरौं।

**नकिरस्य शचीनां नियन्ता सूनृतानाम्। नकिर्वक्ता न दादिति ॥१५॥**
इन्द्रदेवका महान् सामर्थ्यलाई कसैले परास्त गर्न सक्दैन। उनलाई दान दाता नभन्ने पनि कोही छैन।

**न नूनं ब्रह्मणामृणं प्राशूनामस्ति सुन्वताम्। नसोमो अप्रता पपे ॥१६॥**
सोम पेल्ने र पान गर्ने ब्राह्मणमा निश्चित रूपले कुनै ऋण हुँदैन। जसले ऋण तिर्दैन, उसले सोमपान गर्न सक्दैन।

**पन्य इदुप गायत पन्य उक्थानि शंसत। ब्रह्मा कृणोत पन्य इत् ॥१७॥**
प्रार्थनाका लागि योग्य इन्द्रदेवका निम्ति स्तुतिगान गरौं, उनका लागि मन्त्र उच्चारण गरौं र उनैका निम्ति स्तोत्र निर्माण गरौं।

**पन्या आ दर्दिरच्छता सहस्रा वाज्यवृतः। इन्द्रो यो यज्वनो वृधः ॥१८॥**
शक्तिशाली इन्द्रदेवले हजारौं शत्रुको वध गरेका थिए। उनलाई कुनै शत्रुले पनि पीडित गर्दैनन्। उनी याजकलाई समृद्ध गर्दछन्।

**वि षू चर स्वधा अनु कृष्टीनामन्वाहुवः। इन्द्र पिब सुतानाम् ॥१९॥**
हे इन्द्रदेव ! तिम्रा धारकशक्तिका निम्ति हामीलाई तिमी अन्न प्रदान गर र हामीले प्रदान गरेको सोमरस पान गर।

**पिब स्वधैनवानामुत यस्तुग्र्ये सुचा। उतायमिन्द्र यस्तव ॥२०॥**
हे इन्द्रदेव ! तिम्रा निम्ति गाईको दुध र जल मिसाएको सोमरस प्रस्तुत छ, पान गर।

**अतीहि मन्युषाविणं सुषुवांसमुपारणे। इमं रातं सुतं पिब ॥२१॥**
हे इन्द्रदेव ! अधिक क्रोधित भएर निकालेको सोमरस ग्रहण नगर। उत्तम विधिले सोमरस निकाल्ने साधकका यज्ञमा पुगेर सोमरस पान गर।

**इहि तिस्रः परावत इहि पञ्च जनाँ अति। धेना इन्द्रावचाकशत् ॥२२॥**
हे इन्द्रदेव ! तिमी हाम्रो पुकार सुनेर तीनै सवनमा दूर देशबाट पनि आऊ। तिमी पाँच किसिमका मानिसलाई नाघेर भए पनि हाम्रा नजिक आऊ।

**सूर्यो रश्मिं यथा सृजाऽऽत्वा यच्छन्तु मे गिरः। निम्नमापो न सध्र्यक् ॥२३॥**
हे इन्द्रदेव ! सूर्यले रश्मि प्रदान गरेझैं हामीलाई ऐश्वर्य प्रदान गर। जलको धारो ओरालोतिर प्रवाहित भएझैं हाम्रो स्तुति वचन तिम्रा नजिकै पुगोस्।

**अध्वर्यवा तु हि षिञ्च सोमं वीराय शिप्रिणे। भरा सुतस्य पीतये ॥२४॥**
हे अध्वर्यु हो ! कलशमा सोमरस ल्याएर किरीट धारण गर्ने इन्द्रदेवले पिउनका लागि सकेसम्म चाँडो समर्पित गर।

**य उद्नः फलिगं भिनन्न्य१क्सिन्धूँरवासृजत्। यो गोषु पक्वं धारयत् ॥२५॥**
इन्द्रदेवले जलका निम्ति बादल छरपस्ट पारे, सरिताहरू बगाए र गाईभित्र परिपक्व दुध स्थापित गराए।

**अहन्वृत्रमृचीषम और्णवाभमहीशुवम्। हिमेनाविध्यदर्बुदम् ॥२६॥**
सबै साधनले प्रशंसा गरिने इन्द्रदेवले वृत्र, आर्णनाभ, अहीशुव र अर्बुदलाई सिध्याए।

**प्र व उग्राय निष्टुरेऽषाळ्हाय प्रसक्षिणे। देवत्तं ब्रह्म गायत ॥२७॥**
हे स्तुतिकर्ता हो ! शक्तिशाली बलवान् र शत्रु विनाश गर्ने इन्द्रदेवलाई हर्षित गर्ने स्तोत्र पाठ गर।

**यो विश्वान्यभि व्रता सोमस्य मदे अन्धसः। इन्द्रो देवेषु चेतति ॥२८॥**
हे इन्द्रदेव ! तिमी सोमरसले आनन्दित भएर देवताहरूमा सधैं ज्ञान जागृत गराउँछौ।

**इह त्या सधमाद्या हरी हिरण्यकेश्या। वोळ्हामभि प्रयो हितम् ॥२९॥**
सँगसँगै रहेर उत्साहित हुने, सुनौलो जगर भएका दुवै अश्वले कल्याणकारी धनधान्य हामीतिर ल्याऊन्।

अर्वाञ्चं त्वा पुरुष्टुत प्रियमेधस्तुता हरी। सोमपेयाय वक्षतः ॥३०॥

अनेकौंले स्तुति गरेका हे इन्द्रदेव ! अश्विनीकुमार र प्रियमेधले तिम्रो प्रशंसा गर्छन्। त्यसैले सोमपान गर्नका लागि यज्ञस्थलका नजिक आऊ।

[सूक्त - ३३]

**ऋषि** - मेधातिथि काण्व। **देवता** - इन्द्र। **छन्द** - बृहती गायत्री अनुष्टुप्।

**वयं घ त्वा सुतावन्त आपो न वृक्तबर्हिषः।**
**पवित्रस्य प्रस्रवणेषु वृत्रहन् परि स्तोतार आसते ॥१॥**

हे वृत्रहन्ता इन्द्रदेव ! जल ओरालोतिर बगेझैं शोधित सोमरससहित झुकेर हामी तिमीलाई नमस्कार गर्दछौं। पवित्र यज्ञका कुशका आसनमा एकैसाथ बसेर याजकहरू तिम्रो उपासना गर्दछन्।

**स्वरन्ति त्वा सुते नरो वसो निरेक उक्थिनः।**
**कदा सुतं तृषाण ओक आ गम इन्द्र स्वब्दीव वंसगः ॥२॥**

सबैलाई निवास दिने हे इन्द्रदेव ! सोमरस निकालेर याजकले तिम्रो स्तुति गर्दछन्। सोमपान गर्ने इच्छाले साँढे डुक्रिएजस्तो शब्द निकाल्दै कहिले यहाँ आइपुग्छौ ?

**कण्वेभिर्धृष्णवा धृषद्वाजं दर्षि सहस्रिणम्।**
**पिशङ्गरूपं मघवन् विचर्षणे मक्षू गोमन्तमीमहे ॥३॥**

धनवान्, ज्ञानी, हे इन्द्रदेव ! शत्रुनाशक, सुवर्णको कान्तियुक्त, गाईजस्तै पवित्र धन तिमीबाट पाउन हामी इच्छुक छौं। हे शूरवीर इन्द्रदेव ! कण्व वंशीय ऋषिहरूले स्तुति गरेपछि तिमी हजारौं किसिमका बल तथा ऐश्वर्य प्रदान गर्दछौ।

**पाहि गायान्धसो मद इन्द्राय मेध्यातिथे।**
**यः संमिश्लो हर्योर्यः सुते सचा वज्री रथो हिरण्ययः ॥४॥**

हे मेधातिथि ! रथमा दुई वटा अश्व जोत्ने, वज्रधारी, रमणीय, सुवर्ण रथमा विराजमान, इन्द्रदेवलाई सोमपानले आनन्दित गरेर आफ्ना गाईको रक्षा गर।

**यः सुषव्यः सुदक्षिण इनो यः सुक्रतुर्गृणे।**
**य आकरः सहस्रा यः शतामघ इन्द्रो यः पूर्भिदारितः ॥५॥**

दायाँ र बायाँ हात श्रेष्ठ हुने, सत्कर्म गर्ने, हजारौं गुणले सम्पन्न, सयौं ऐश्वर्यले युक्त, शत्रुको किल्ला ध्वस्त पार्ने र यज्ञमा आउने इन्द्रदेवलाई हामी प्रार्थना गर्दछौं।

**यो धृषितो योऽवृतो यो अस्ति श्मश्रुषु श्रितः।**
**विभूतद्युम्नश्च्यवनः पुरुष्टुतः क्रत्वा गौरिव शाकिनः ॥६॥**

पराजित नभईकन शत्रुका बीचमा प्रवेश गरेर संहार गर्ने, प्रचुर ऐश्वर्यसम्पन्न तथा अनेकौं तिरबाट स्तुत्य इन्द्रदेव आफ्ना कर्ममा प्रयत्नशील यजमानका लागि गाईजस्तै छन्।

**क ईं वेद सुते सचा पिबन्तं कद्वयो दधे।**
**अयं यः पुरो विभिनत्त्योजसा मन्दानः शिप्र्यन्धसः ॥७॥**

सोमयज्ञमा एकै ठाउँमा बसेर सोमपान गर्ने अत्यधिक वैभव सम्पन्न इन्द्रदेवलाई कसले चिन्दैन ? सोमपानले खुसी हुने, राम्रो टोपी लगाएका इन्द्रदेवका शक्तिले विरोधीको सहर विनाश गर्दछ।

**दाना मृगो न वारणः पुरुत्रा चरथं दधे।**
**नकिष्ट्वा नि यमदा सुते गमो महाँश्चरस्योजसा ॥८॥**

आफ्ना ओजले विचरण गर्ने, हाम्रा लागि सम्माननीय हे इन्द्रदेव ! तिमी यस सोमयज्ञमा आऊ। शत्रुको खोजीमा घुम्ने, मातिएको मत्ता हात्तीजस्तै भएर रथद्वारा यज्ञमा जाँदा तिमीलाई कसैले रोक्न सक्दैन।

**य उग्रः सन्ननिष्टृतः स्थिरो रणाय संस्कृतः।**
**यदि स्तोतुर्मघवा शृणवद्धवं नेन्द्रो योषत्या गमत् ॥९॥**

शस्त्रले सुसज्जित भएर युद्धभूमिमा रहने, अपराजेय, पराक्रमी, वैभवशाली इन्द्रदेव हाम्रो स्तुति सुनेर अर्को स्थानमा नगईकन यसै यज्ञमा उपस्थित होऊन्।

सत्यमित्था वृषेदसि वृषजूतिर्नोऽवृतः।
वृषा ह्युग्र शृण्विषे परावति वृषो अर्वावति श्रुतः ॥१०॥

हे वीर इन्द्रदेव ! टाढा वा नजिक, जहाँसुकैका देशमा शक्तिशाली भनेर तिम्रो ख्याति फैलिएको छ। हे बलशाली इन्द्रदेव ! सोमयज्ञ गर्ने हामी याजकले आह्वान गर्दा आएर हाम्रो संरक्षण गर।

वृषणस्ते अभीशवो वृषा कशा हिरण्ययी।
वृषा रथो मघवन्वृषणा हरी वृषा त्वं शतक्रतो ॥११॥

हे ऐश्वर्यवान् इन्द्रदेव ! तिम्रो सुनौलो चाबुक, रास, रथ र दुवै अश्व अत्यन्त बलशाली तथा सामर्थ्यवान् छन्। हे सय यज्ञ गर्ने इन्द्रदेव ! तिमी अत्यन्त शक्तिसम्पन्न छौ।

वृषा सोता सुनोतु ते वृषन्नृजीपिन्ना भर।
वृषा दधन्वे वृषणं नदीष्वा तुभ्यं स्थातर्हरीणाम् ॥१२॥

सोम पेल्ने शक्तिशाली मानिसले सोमरस निचोरुन्। हे सोमपान गर्ने इन्द्रदेव ! हामीलाई प्रचुर ऐश्वर्य प्रदान गर। तिम्रा निम्ति पानीले सफा गरिएको सोम मिसाउनेहरू सोमरस तयार गर्दछन्।

एन्द्र याहि पीतये मधु शविष्ठ सोम्यम्।
नायमच्छा मघवा शृणवद् गिरो ब्रह्मोक्था च सुक्रतुः ॥१३॥

हे महान् कार्य गर्ने शक्तिसम्पन्न इन्द्रदेव ! तिमी मधुर सोमरस पान गर्नका लागि आऊ। हामीले उच्चारण गरेको ज्ञानयुक्त स्तोत्र ध्यानपूर्वक सुन।

वहन्तु त्वा रथेष्ठामा हरयो रथयुजः।
तिरश्चिदर्यं सवनानि वृत्रहन्नन्येषां या शतक्रतो ॥१४॥

वृत्रको संहार गर्ने हे सयौं असल काम गर्ने इन्द्रदेव ! रथमा नारेका तिम्रा अश्वले, अरूका यज्ञ छोडेर हाम्रा यस श्रेष्ठ यज्ञमा तिमीलाई लिएर आऊन्।

अस्माकमद्यान्तमं स्तोमं धिष्व महामह।
अस्माकं ते सवना सन्तु शन्तमा मदाय द्युक्ष सोमपाः ॥१५॥

हे अत्यधिक सोमपान गर्ने महान् इन्द्रदेव ! हामीले गरेको स्तुति नजिकै आएर तिमी सुन। तिमीलाई हर्षित गर्नका लागि सुखदायी सोमरस तयार छ।

नहि षस्तव नो मम शास्त्रे अन्यस्य रण्यति। यो अस्मान्वीर आनयत् ॥१६॥

ओजस्वी इन्द्रदेव हाम्रा नायक हुन्। उनी हाम्रो, तिम्रो वा अरू कसैको अधीनमा छैनन्।

इन्द्रश्चिद्घा तदब्रवीत्स्त्रिया अशास्यं मनः। उतो अह क्रतुं रघुम् ॥१७॥

स्त्रीका मनमा अधिकार जमाउनु साह्रै कठिन काम हो, किनभने उनीहरूको सङ्कल्प ज्यादै अदम्य हुन्छ भन्ने इन्द्रदेवको पनि भनाइ थियो।

सप्ती चिद्घा मदच्युता मिथुना वहतो रथम्। एवेद्धूर्वृष्ण उत्तरा ॥१८॥

इन्द्रदेवका दुई ज्यादै बलिया अश्व रथमा जोतिएर उनलाई लिई हिँड्दछन्। उनका रथको धुरो ज्यादै राम्रो छ।

अधः पश्यस्व मोपरि सन्तरां पादकौ हर।
मा ते कशप्लकौ दृशन्त्स्त्री हि ब्रह्मा बभूविथ ॥१९॥

तिमी उँधोतिर दृष्टि राख, माथितिर होइन, गोडा नजिकनजिक राखेर हिँड। तिम्रो मुख र पिँडौला यी दुवै अङ्ग देखिनुहुँदैन। तिमी ज्ञानी भए पनि स्त्री नै बनेर बस।

[सूक्त - ३४]

ऋषि - नीपातिथि काण्व अङ्गिरा। देवता - इन्द्र। छन्द - अनुष्टुप् गायत्री।

एन्द्र याहि हरिभिरुप कण्वस्य सुष्टुतिम्।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥१॥

हे तेजस्वी इन्द्रदेव ! तिमी अश्वमा आरुढ भएर कण्व ऋषिको श्रेष्ठ स्तुति सुन्न आऊ। द्युलोकमा शासन गर्ने तिमी पुनः स्वर्गका लागि प्रस्थान गर।

आ त्वा ग्रावा वदन्निह सोमी घोषेण यच्छतु।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥२॥

हे इन्द्रदेव ! सोम पेल्ने ढुङ्गाले शब्द निकाल्दै तिमीलाई सोम प्रदान गरुन्। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! तिमी आफ्नो लोक जाऊ।

अत्रा वि नेमिरेषामुरां न धूनुते वृकः।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥३॥

ब्वाँसाले भेडालाई तर्साएझैं यहाँ यस ढुङ्गाले सोमलतालाई थर्काएको छ। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! तिमी आफ्नो लोक जाऊ।

आ त्वा कण्वा इहावसे हवन्ते वाजसातये।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥४॥

हे इन्द्रदेव हामी कण्व वंशीय ऋषिहरू आफ्नो सुरक्षा र अन्न प्राप्त गर्नका लागि तिमीलाई बोलाउँछौं। त्यसपछि द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! तिमी आफ्नो लोक जाऊ।

दधामि ते सुतानां वृष्णे न पूर्वपाय्यम्।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥५॥

वायुलाई सबैभन्दा पहिले संस्कार गरेको सोमरस प्रदान गरेझैं हामी तिमीलाई सोमरस प्रदान गर्दछौं। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! तिमी आफ्नो लोक जाऊ।

स्मत्पुरन्धिर्न आ गहि विश्वतोधीर्न ऊतये।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥६॥

हे इन्द्रदेव ! तिमी हाम्रो बुद्धि संरक्षित र यश विस्तृत गर्नका लागि आऊ। त्यसपछि द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! तिमी आफ्नो लोक जाऊ।

आ नो याहि महेमते सहस्रोते शतामघ।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥७॥

हे श्रेष्ठ बुद्धि भएका इन्द्रदेव ! तिमी हजारौं रक्षणसाधन भएका र प्रचुर ऐश्वर्यका धनी हौ। तिमी द्युलोकमा निवास र शासन गर्ने हौ। हे इन्द्रदेव ! आफ्नो लोक जाऊ।

आ त्वा होता मनुर्हितो देवत्रा वक्षदीड्यः।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥८॥

देवताहरूले प्रशंसा गरेका र मानिसका हितैषि अग्निदेवले तिमीलाई हाम्रा निकट ल्याऊन्। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! तिमी आफ्नो लोक जाऊ।

आ त्वा मदच्युता हरी श्येनं पक्षेव वक्षतः।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥९॥

पँखेटाले बाज पक्षीलाई थामेझैं मदमस्त घोडाले तिमीलाई बोकेर यहाँ ल्याऊन्। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! तिमी आफ्नो लोक जाऊ।

आ याह्यर्य आ परि स्वाहा सोमस्य पीतये।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥१०॥

हामीले प्रदान गरेको सोमरस पान गर्नका लागि तिमी आऊ। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! तिमी आफ्नो लोक जाऊ।

आ नो याह्युपश्रुत्युक्थेषु रणया इह।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥११॥

तिमी स्तुति सुनेर यस यज्ञका नजिकै आऊ र हामीलाई हर्षित गर। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! फेरि तिमी आफ्नो लोक जाऊ।

सरूपैरा सु नो गहि संभृतैः सम्भृताश्वः।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥१२॥

हे इन्द्रदेव ! तिमीसित अति बलिया घोडा छन्। तिमी उनै अश्वद्वारा नजिकै आऊ। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! फेरि तिमी आफ्नो लोक जाऊ।

आ याहि पर्वतेभ्यः समुद्रस्याधि विष्टपः।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥१३॥

तिमी पर्वत र आकाशबाट आऊ। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! फेरि तिमी आफ्नो लोक जाऊ।

आ नो गव्यान्यश्व्या सहस्रा शूर दर्दृहि।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥१४॥

हे पराक्रमी इन्द्रदेव ! हामीलाई हजारौँ गाई र अश्व प्रदान गर। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! फेरि तिमी आफ्नो लोक जाऊ।

आ नः सहस्रशो भरायुतानि शतानि च।
दिवो अमुष्य शासतो दिवं यय दिवावसो ॥१५॥

हे इन्द्रदेव हामीलाई सयौँ वा हजारौँ सङ्ख्यामा ऐश्वर्य प्रदान गर। द्युलोकमा निवास र शासन गर्ने हे इन्द्रदेव ! फेरि तिमी आफ्नो लोक जाऊ।

आ यदिन्द्रश्च दद्वहे सहस्रं वसुरोचिषः। ओजिष्ठमश्व्यं पशुम् ॥१६॥

धनले समृद्ध भएर तिमी र हामी इन्द्रदेवले प्रदान गरेका हजारौँ किसिमका बलिया अश्व आदि पशु ग्रहण गरौँ।

य ऋज्रा वातरंहसोऽरुषासो रघुष्यदः। भ्राजन्ते सूर्या इव ॥१७॥

वायुको जस्तै गति भएका र सजिलैसित गमन गर्ने इन्द्रदेवका रथमा जोतिएका घोडा सूर्यदेवजस्तै आलोकित हुँदै छन्।

पारावतस्य रातिषु द्रवच्चक्रेष्वाशुषु। तिष्ठं वनस्य मध्य आ ॥१८॥

पारावतले प्रदान गरेको ऐश्वर्य र द्रुतगामी अश्वयुक्त रथमा विराजमान भएर हामी वनका माझमा पुगेका छौँ।

[सूक्त - ३५]

ऋषि - श्यावाश्व आत्रेय। देवता - अश्विनीकुमार। छन्द - ज्योति पंक्ति महावृहती।

अग्निनेन्द्रेण वरुणेन विष्णुनादित्यै रुद्रैर्वसुभिः सचाभुवा।
सजोषसा उषसा सूर्येण च सोमं पिबतमश्विना ॥१॥

हे अश्विनीकुमार हो ! इन्द्र, वरुण, अग्नि, विष्णु, आदित्यगण, वसु, रुद्र, उषा र सूर्यदेवसहित तिमीहरू दुवैले सोमरस पान गर।

विश्वाभिर्धीभिर्भुवनेन वाजिना दिवा पृथिव्याद्रिभिः साभुवा।
सजोषसा उषसा सूर्येण च सोमं पिबतमश्विना ॥२॥

हे शक्तिशाली अश्विनीकुमार हो ! समस्त जीवधारीहरू, द्युलोक, भूलोक, उषा, सूर्य तथा श्रेष्ठ बुद्धिले सम्पन्न भएर तिमीहरू सोमपान गर।

विश्वैर्देवैस्त्रिभिरेकादशैरिहाद्भिर्मरुद्भिर्भृगुभिः सचाभुवा।
सजोषसा उषसा सूर्येण च सोमं पिबतमश्विना ॥३॥

हे अश्विनीकुमार हो ! सम्पूर्ण तेत्तीस देवता, भृगुहरू, मरुत्हरू, जल, उषा र सूर्यदेवका साथमा मिलेर तिमीहरू दुवैले सोमरस पान गर।

जुषेथां यज्ञं बोधतं हवस्य मे विश्वेह देवौ सवनाव गच्छतम्।
सजोषसा उषसा सूर्येण चेषं नो वोढमश्विना ॥४॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै हाम्रा स्तुतिमा ध्यान देओ र हाम्रो यज्ञ सेवन गर। तिमीहरू दुवै यज्ञका तीनै सवनमा आओ। त्यसपछि तिमीहरू उषादेवी र सूर्यदेवसँगै विराजमान भएर हामीलाई अन्न प्रदान गर।

स्तोमं जुषेथां युवशेव कन्यनां विश्वेह देवौ सवनाव गच्छतम्।
सजोषसा उषसा सूर्येण चेषं नो वोढमश्विना ॥५॥

हे अश्विनीकुमारहरू हो ! युवतीका स्वयंवरमा आउन युवकले निम्तो स्वीकार गरेझैँ हाम्रो स्तुति स्वीकार गर। तिमीहरू हाम्रा यज्ञका सबै सवनमा आओ र सूर्यदेवका साथमा विराजमान भएर हामीलाई अन्न प्रदान गर।

गिरो जुषेथामध्वरं जुषेथां विश्वेह देवौ सवनाव गच्छतम्।
सजोषसा उषसा सूर्येण चेषं नो वोढमश्विना ॥६॥

हे अश्विनीकुमार हो ! हाम्रो स्तुति वचन तिमीहरू स्वीकार गर र श्रेष्ठ यज्ञ सेवन गर। यज्ञका सबै सवनमा आओ र प्रातः सूर्योदय कालमा हामीलाई अन्न प्रदान गर।

हारिद्रवेव पतथो वनेदुप सोमं सुतं महिषेवाव गच्छथः।
सजोषसा उषसा सूर्येण च त्रिर्वर्तिर्यातमश्विना ॥७॥

हे अश्विनीकुमारहरू हो ! तिर्खाले व्याकुल भएको पक्षी वा पशु पानीका नजिकै पुगेझैं तयार गरिएको सोमरसका नजिकै आओ। तिमीहरू उषादेवी र सूर्यदेवका साथमा हाम्रा यज्ञस्थलमा आओ।

हंसाविव पतथो अध्वगाविव सोमं सुतं महिषेवाव गच्छथः।
सजोषसा उषसा सूर्येण च त्रिर्वर्तिर्यातमश्विना ॥८॥

हे अश्विनीकुमारहरू हो ! तिमीहरू हंसजस्तै तेजसम्पन्न छौ। तिर्खाले खरिएको बटुवा र पशुपक्षी पानीका नजिकै गएझैं तिमीहरू दुवै तयार गरिएको सोमरसनजिकै आओ। उषाकाल र सूर्योदयका समयमा हाम्रा घरको यज्ञका तीनै सवनमा आओ।

श्येनाविव पतथो हव्यदातये सोमं सुतं महिषेवाव गच्छथः।
सजोषसा उषसा सूर्येण च त्रिर्वर्तिर्यातमश्विना ॥९॥

हे अश्विनीकुमार हो ! अन्न प्रदान गर्नका लागि तिमीहरू बाज पक्षीको जस्तै द्रुतगतिले आओ। जलका नजिकै जाने प्यासा पशुपक्षीझैं सोमरसतिर आओ। उषाकाल र सूर्योदयका हाम्रा यज्ञका तीनै सवनमा आओ।

पिबतं च तृप्णुतं चा च गच्छतं प्रजां च धत्तं द्रविणं च धत्तम्।
सजोषसा उषसा सूर्येण चोर्जं नो धत्तमश्विना ॥१०॥

हे अश्विनीकुमार हो ! सोमपान गरेर सन्तुष्ट भएर हामीलाई सन्तान र ऐश्वर्य प्रदान गर। तिमीहरू उषाकाल र सूर्योदयका हाम्रा यज्ञका तीनै सवनमा आओ।

जयतं च प्र स्तुतं च प्र चावतं प्रजां च धत्तं द्रविणं च धत्तम्।
सजोषसा उषसा सूर्येण चोर्जं नो धत्तमश्विना ॥११॥

हे अश्विनीकुमार हो ! तिमीहरू शत्रुमाथि विजय प्राप्त गर। हामीबाट प्रशंसित भएर हाम्रो रक्षा गर। हामीलाई सन्तान र ऐश्वर्य प्रदान गर। उषाकाल र सूर्योदयका हाम्रा यज्ञका तीनै सवनमा आओ।

हतं च शत्रून्यततं च मित्रिणः प्रजां च धत्तं द्रविणं च धत्तम्।
सजोषसा उषसा सूर्येण चोर्जं नो धत्तमश्विना ॥१२॥

हे शत्रु विनाश गर्ने अश्विनीकुमार हो ! हामीलाई सन्तान र ऐश्वर्य प्रदान गर। तिमीहरू उषाकाल र सूर्योदयका हाम्रा यज्ञका तीनै सवनमा आओ।

मित्रावरुणवन्ता उत धर्मवन्ता मरुत्वन्ता जरितुर्गच्छथो हवम्।
सजोषसा उषसा सूर्येण चादित्यैर्यातमश्विना ॥१३॥

हे अश्विनीकुमार हो ! मित्र, वरुण र धर्मशील मरुत्‌हरूसँग स्तुति गर्नहरूको आह्वान सुनेर आउँछौ। देवी उषा, सूर्यदेव र अदितिका पुत्रसँग विद्यमान रहेर गमन गर।

अङ्गिरस्वन्ता उत विष्णुवन्ता मरुत्वन्ता जरितुर्गच्छथो हवम्।
सजोषसा उषसा सूर्येण चादित्यैर्यातमश्विना ॥१४॥

हे अश्विनीकुमार हो ! स्तोताको आह्वान सुनेपछि विष्णु र आङ्गिरससँग आउँछौ। देवी उषा, सूर्यदेव र अदितिका पुत्रसँगै विद्यमान रहेर गमन गर।

ऋभुमन्ता वृषणा वाजवन्ता मरुत्वन्ता जरितुर्गच्छथो हवम्।
सजोषसा उषसा सूर्येण चादित्यैर्यातमश्विना ॥१५॥

अन्नले सामर्थ्यवान् हे अश्विनीकुमार हो ! स्तोताको आह्वान सुनेर ऋभुहरू, आदित्यहरू र मरुत्‌हरूसँग आउँछौ। तिमीहरू उषादेवी र सूर्यदेवका साथमा प्रस्थान गर।

ब्रह्म जिन्वतमुत जिन्वतं धियो हतं रक्षांसि सेधतममीवाः।
सजोषसा उषसा सूर्येण च सोमं सुन्वतो अश्विना ॥१६॥

हे अश्विनीकुमार हो ! तिमीहरू असुर संहार गर र रोगका कीटाणु भगाओ। मानिसको ज्ञान र कर्म नियन्त्रित गर। उषादेवी र सूर्यदेवसँग सोमयागमा आएर सोमरस पान गर।

क्षत्रं जिन्वतमुत जिन्वतं नृन्हतं रक्षांसि सेधतममीवाः।
सजोषसा उषसा सूर्येण च सोमं सुन्वतो अश्विना ॥१७॥

हे अश्विनीकुमार हो ! तिमीहरू असुर विनाश गर र रोगका कीटाणु नष्ट गर्दै योद्धा र तिनको पराक्रम नियन्त्रित गर। उषादेवी र सूर्यदेवसँग यज्ञमा आएर सोमरस पान गर।

धेनूर्जिन्वतमुत जिन्वतं विशो हतं रक्षांसि सेधतममीवाः।
सजोषसा उषसा सूर्येण च सोमं सुन्वतो अश्विना ॥१८॥

हे अश्विनीकुमार हो ! असुर संहार गर्दै रोग नष्ट गरेर गाई तथा सन्तान बलिया बनाओ। उषादेवी र सूर्यदेवसँग आएर पेलेर तयार गरेको सोमरस पान गर।

अत्रेरिव शृणुतं पूर्व्यस्तुतिं श्यावाश्वस्य सुन्वतो मदच्युता।
सजोषसा उषसा सूर्येण चाश्विना तिरोअह्न्यम् ॥१९॥

हे शत्रुको मद चुर गराउने अश्विनीकुमार हो ! जसरी तिमीहरूले अत्रिको प्रार्थना सुनेका थियौ, उसै गरी सोम पेल्दै गरेको म श्यावाश्व ऋषिको प्रार्थना पनि सुन। तिमीहरू दुवै उषादेवी र सूर्यदेवसँग आएर पेलेर तयार गरेको सोमरस पान गर।

सर्गां इव सृजतं सुष्टुतीरुप श्यावाश्वस्य सुन्वतो मदच्युता।
सजोषसा उषसा सूर्येण चाश्विना तिरोअह्न्यम् ॥२०॥

हे शत्रुको घमन्ड चुर गराउने अश्विनीकुमार हो ! सोम पेल्दै गरेको म श्यावाश्व ऋषिको प्रार्थना नजिकै आएर स्वीकार गर। उषादेवी र सूर्यदेवसँग आएर पेलेर तयार गरेको सोमरस पान गर।

रश्मींरिव यच्छतमध्वरां उप श्यावाश्वस्य सुन्वतो मदच्युता।
सजोषसा उषसा सूर्येण चाश्विना तिरोअह्न्यम् ॥२१॥

हे शत्रुको घमन्ड नाश गराउने अश्विनीकुमार हो ! सोम पेल्ने म श्यावाश्व ऋषिका यज्ञमा लगामले नियन्त्रण गरिएझैं आओ। तिमीहरू दुवै उषादेवी र सूर्यदेवसँग आएर पेलेर तयार गरेको सोमरस पान गर।

अर्वाग्रथं नि यच्छतं पिबतं सोम्यं मधु।
आ यातमश्विना गतमवस्युर्वामहं हुवे धत्तं रत्नानि दाशुषे ॥२२॥

हे अश्विनीकुमार हो ! आफ्नो सुरक्षाका निम्ति हामी आह्वान गर्दछौं। आफ्नो रथ हाम्रा नजिकै लिएर आओ र मधुर सोमरस पान गरेर हामीलाई रत्न प्रदान गर।

नमोवाके प्रस्थिते अध्वरे नरा विवक्षणस्य पीतये।
आ यातमश्विना गतमवस्युर्वामहं हुवे धत्तं रत्नानि दाशुषे ॥२३॥

हे अश्विनीकुमार हो ! आफ्नो सुरक्षाका निम्ति हामी आह्वान गर्दछौं। तिमीहरू पक्कै आओ र हाम्रा श्रेष्ठ यज्ञमा अभिवादन तथा पूजन ग्रहण गर्दै सोमपान गरेर म दानीलाई रत्न धन आदि प्रदान गर।

स्वाहाकृतस्य तृम्पतं सुतस्य देवावन्धसः।
आ यातमश्विना गतमवस्युर्वामहं हुवे धत्तं रत्नानि दाशुषे ॥२४॥

हे अश्विनीकुमारहरू हो ! आफ्नो संरक्षणका लागि हामी बोलाउँदै छौं। तिमीहरू निश्चय आओ। हामीले पेलेर तयार पारेको सोमको हवि ग्रहण गरेर सन्तुष्ट हाओ र हामीलाई रत्न धन प्रदान गर।

[सूक्त - ३६]

ऋषि - श्यावाश्व आत्रेय। देवता - इन्द्र। छन्द - शक्वरी महापङ्क्ति।

अवितासि सुन्वतो वृक्तबर्हिषः पिबा सोमं मदाय कं शतक्रतो। यं ते
भागमधारयन्विश्वाः सेहानः पृतना उरु ज्रयः समप्सुजिन्मरुत्वां इन्द्र सत्पते ॥१

हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! सोम पेल्ने र कुशको आसन ओछ्याउने याजकलाई तिमी संरक्षण प्रदान गर्दछौ। तिमी सत्पुरुषलाई पालन गर्ने र समस्त शत्रु पराजित गर्ने हौ। देवताहरूले निर्धारित गरेको सोमको अंश तिमी मरुत्हरूसँग पान गरेर हर्षित होऊ।

प्राव स्तोतारं मघवन्नव त्वां पिबा सोमं मदाय कं शतक्रतो। यं ते
भागमधारयन्विश्वाः सेहानः पृतना उरु ज्रयः समप्सुजिन्मरुत्वाँ इन्द्र सत्पते ॥२
हे सयौं यज्ञ गर्ने महान् वैभवसम्पन्न इन्द्रदेव ! स्तोतालाई संरक्षण प्रदान गर। तिमी समस्त शत्रुका सेनामाथि विजय प्राप्त गर्ने र फैलिएका जल नियन्त्रित गर्ने हौ। देवताहरूले निर्धारित गरेको सोमको अंश मरुत्हरूसँगै पान गरेर हर्षित होऊ।

ऊर्जा देवाँ अवस्योजसा त्वां पिबा सोमं मदाय कं शतक्रतो। यं ते
भागमधारयन् विश्वाः सेहानः पृतना उरु ज्रयः समप्सुजिन्मरुत्वाँ इन्द्र सत्पते ॥
हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! तिमी आफ्ना ओजस्विता र शक्तिले देवतालाई संरक्षित गर्दछौ। तिमी शत्रुको सेना पराजित गर्ने र सर्वत्र फैलिएको जल नियन्त्रित गर्ने हौ। देवताले निर्धारित गरेको सोमको अंश मरुत्हरूसँगै पान गरेर हर्षित होऊ।

जनिता दिवो जनिता पृथिव्याः पिबा सोमं मदाय कं शतक्रतो। यं ते
भागमधारयन् विश्वाः सेहानः पृतना उरु ज्रयः समप्सुजिन्मरुत्वाँ इन्द्र सत्पते ॥
हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! तिमी द्युलोक र भूलोक उत्पन्न गर्दछौ। शत्रुको सेना पराजित गर्ने र सर्वत्र फैलिएको जल नियन्त्रित गर्दछौ। देवताले निर्धारित गरेको सोमको अंश मरुत्हरूसँगै पान गरेर हर्षित होऊ।

जनिताश्वानां जनिता गवामसि पिबा सोमं मदाय कं शतक्रतो। यं ते
भागमधारयन् विश्वाः सेहानः पृतना उरु ज्रयः समप्सुजिन्मरुत्वाँ इन्द्र सत्पते ॥
हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! तिमी गाई र अश्व उत्पन्न एवं रक्षा गर्दछौ। शत्रुका सेना पराजित गर्ने र सर्वत्र फैलिएको जल नियन्त्रित गर्दछौ। देवताहरूले निर्धारित गरेको सोमको अंश मरुत्हरूसँग पान गरेर हर्षित होऊ।

अत्रीणां स्तोममद्रिवो महस्कृधि पिबा सोमं मदाय कं शतक्रतो। यं ते
भागमधारयन् विश्वाः सेहानः पृतना उरु ज्रयः समप्सुजिन्मरुत्वाँ इन्द्र सत्पते ॥
हे आयुध धारण गर्ने र सयौं यज्ञ गर्ने इन्द्रदेव ! तिमी अत्रि वंशीय ऋषिको स्तुति सुन। तिमी सबै शत्रुको सेना पराजित गर्ने र सर्वत्र फैलिएको जल नियन्त्रित गर्ने हौ। देवताहरूले निर्धारित गरेको सोमको अंश मरुत्हरूसँगै पान गरेर हर्षित होऊ।

श्यावाश्वस्य सुन्वतस्तथा शृणु यथाशृणोरत्रेः कर्माणि कृण्वतः।
प्र त्रसदस्युमाविथ त्वमेक इन्नृषाह्य इन्द्र ब्रह्माणि वर्धयन् ॥७॥
हे इन्द्रदेव ! तिमीले यज्ञ गर्ने अत्रि ऋषिका स्तुति सुनेका थियौ। सोम अभिषव गर्ने म श्यावाश्व ऋषिको स्तुति पनि सुन। हे इन्द्रदेव ! रणक्षेत्रमा आफ्नो ब्रह्मज्ञान समृद्ध गर्दै त्रसदस्युलाई एक्लै नै तिमीले रक्षा गरेका थियौ।

## [सूक्त – ३७]

ऋषि – श्यावाश्व आत्रेय। देवता – इन्द्र। छन्द – महापंक्ति अतिजगती।

प्रेदं ब्रह्म वृत्रतूर्येष्वाविथ प्र सुन्वतः शचीपत इन्द्र विश्वाभिरूतिभिः।
माध्यन्दिनस्य सवनस्य वृत्रहन्ननेद्य पिबा सोमस्य वज्रिवः ॥१॥
हे बलका स्वामी इन्द्रदेव ! आफ्ना समस्त रक्षणसाधनले यो स्तोता र सोम यज्ञ गर्ने याजकको तिमीले रक्षा गरेका थियौ। निन्दारहित, वज्रधारी र वृत्रलाई हनन गर्ने हे इन्द्रदेव ! सवनमा आएर सोमपान गर।

सेहान उग्र पृतना अभि द्रुहः शचीपत इन्द्र विश्वाभिरूतिभिः।
माध्यन्दिनस्य सवनस्य वृत्रहन्ननेद्य पिबा सोमस्य वज्रिवः ॥२॥
हे बलका स्वामी र वज्र धारण गर्ने इन्द्रदेव ! तिमी अत्यन्त वीर छौ र निन्दारहित भएर वृत्रलाई मार्दछौ। आफ्ना समस्त रक्षणसाधनले यो स्तोता र सोम यज्ञ गर्ने याजकको रक्षा गरेका थियौ। हे इन्द्रदेव ! सवनमा आएर सोमपान गर।

एकराडस्य भुवनस्य राजसि शचीपत इन्द्र विश्वाभिरूतिभिः।
माध्यन्दिनस्य सवनस्य वृत्रहन्ननेद्य पिबा सोमस्य वज्रिवः ॥३॥
हे बलका स्वामी र वज्र धारण गर्ने इन्द्रदेव ! यस लोकमा एक मात्र सम्राट्का रूपमा तिमी

अलङ्कृत छौ र निन्दारहित भएर वृत्र मार्दछौ। आफ्ना समस्त रक्षणसाधनले यो स्तोता र सोम यज्ञ गर्ने याजकको रक्षा गरेका थियौ। हे इन्द्रदेव ! सवनमा आएर सोमपान गर।

**सस्थावाना यवयसि त्वमेक इच्छचीपत इन्द्र विश्वाभिरूतिभिः।**
**माध्यन्दिनस्य सवनस्य वृत्रहन्ननेद्य पिबा सोमस्य वज्रिवः ॥४॥**

हे बलका स्वामी र वज्र धारण गर्ने इन्द्रदेव ! गतिलोसित सङ्गठित भएका शत्रुको सेना तिमी एक्लै छरपस्ट पार्दछौ र निन्दारहित भएर वृत्र मार्दछौ। समस्त रक्षणसाधनले यो स्तोता र सोम यज्ञ गर्ने याजकको रक्षा गरेका थियौ। हे इन्द्रदेव ! सवनमा आएर सोमपान गर।

**क्षेमस्य च प्रयुजश्च त्वमीशिषे शचीपत इन्द्र विश्वाभिरूतिभिः।**
**माध्यन्दिनस्य सवनस्य वृत्रहन्ननेद्य पिबा सोमस्य वज्रिवः ॥५॥**

हे बलका स्वामी र वज्र धारण गर्ने इन्द्रदेव ! तिमी उपलब्ध तथा अनुपलब्ध सबै ऐश्वर्यका अधिपति हौ र निन्दारहित भएर वृत्र मार्दछौ। आफ्ना समस्त रक्षणसाधनले यो स्तोता र सोम यज्ञ गर्ने याजकको रक्षा गरेका थियौ। हे इन्द्रदेव ! मध्यदिनका सवनमा आएर सोमपान गर।

**क्षत्राय त्वमवसि न त्वमाविथ शचीपत इन्द्र विश्वाभिरूतिभिः।**
**माध्यन्दिनस्य सवनस्य वृत्रहन्ननेद्य पिबा सोमस्य वज्रिवः ॥६॥**

हे बलका स्वामी र वृत्रहन्ता इन्द्रदेव ! तिमी आफ्ना सामर्थ्यले सम्पूर्ण विश्व रक्षा गर्दछौ र स्वयं पनि सुरक्षित रहन्छौ। हे निन्दारहित इन्द्रदेव ! आफ्ना समस्त रक्षणसाधनले यो स्तोता र सोम यज्ञ गर्ने याजकको रक्षा गरेका थियौ। मध्य दिनका सवनमा आएर सोमपान गर।

**श्यावाश्वस्य रेभतस्तथा शृणु यथाशृणोरत्रेः कर्माणि कृण्वतः।**
**प्र त्रसदस्युमाविथ त्वमेक इन्नृषाह्य इन्द्र क्षत्राणि वर्धयन् ॥७॥**

हे इन्द्रदेव ! तिमीले यज्ञ गर्ने अत्रि ऋषिका स्तुति सुनेझैं सोम अभिषव गर्ने म श्यावाश्व ऋषिको स्तुति सुन। हे इन्द्रदेव ! रणक्षेत्रमा आफ्नो ब्रह्मज्ञान समृद्ध गर्दै त्रसदस्युलाई एक्लै नै रक्षा गरेका थियौ।

## [सूक्त - ३८]

ऋषि - श्यावाश्व आत्रेय। देवता - इन्द्राग्नी। छन्द - गायत्री।

**यज्ञस्य हि स्थ ऋत्विजा सस्नी वाजेषु कर्मसु। इन्द्राग्नी तस्य बोधतम् ॥१॥**

हे इन्द्र र अग्नि ! तिमीहरू नै यज्ञका ऋत्विक् हौ। तिमीहरू हाम्रो अभिलाषा बुझ र पवित्र यज्ञीय कर्ममा आओ।

**तोशासा रथयावाना वृत्रहणापराजिता। इन्द्राग्नी तस्य बोधतम् ॥२॥**

हे इन्द्र र अग्नि ! शत्रुको सेनालाई हनन गर्ने, रथले यात्रा गर्ने, छेकारो हालेका दुष्टको संहार गर्ने र कहिल्यै परास्त नहुने तिमीहरू हाम्रो स्तुति स्वीकार गर।

**इदं वां मदिरं मध्वधुक्षन्नद्रिभिर्नरः। इन्द्राग्नी तस्य बोधतम् ॥३॥**

हे इन्द्र र अग्नि ! ऋत्विक्हरूले तिमीहरूका लागि आनन्दप्रद, मधुर सोमरस तयार गरेका छन्। त्यसैले हाम्रो प्रार्थना स्वीकार गर।

**जुषेथां यज्ञमिष्टये सुतं सोमं सधस्तुती। इन्द्राग्नी आ गतं नरा ॥४॥**

हे इन्द्र र अग्नि ! तिमीहरूको प्रार्थना एकै साथ गरिन्छ। हाम्रो आकाङ्क्षा पूरा गर्नका लागि तिमीहरू यज्ञमा आओ र पेलिराखेको सोमरस पान गर।

**इमा जुषेथां सवना येभिर्हव्यान्यूहथुः। इन्द्राग्नी आ गतं नरा ॥५॥**

हे इन्द्र र अग्नि ! जुन शक्तिले तिमीहरू आहुति ग्रहण गर्दछौ, हाम्रा यस यज्ञमा आएर उसै शक्तिले यसको सेवन गर।

**इमां गायत्रवर्तनिं जुषेथां सुष्टुतिं मम। इन्द्राग्नी आ गतं नरा ॥६॥**

हे इन्द्र र अग्नि ! गायत्री छन्दले बनेको स्तुति सुन र हाम्रा नजिक आओ।

**प्रातर्यावभिरा गतं देवेभिर्जेन्यावसू। इन्द्राग्नी सोमपीतये ॥७॥**

हे इन्द्र र अग्नि ! तिमीहरू शत्रुको सम्पत्तिमाथि विजय प्राप्त गर्दछौ। उषा कालमा आउने देवताहरूसँग सोमपान गर्नका लागि आओ।

**श्यावाश्वस्य सुन्वतोऽत्रीणां शृणुतं हवम्। इन्द्राग्नी सोमपीतये ॥८॥**

हे इन्द्र र अग्नि ! तिमीहरू सोम अभिषव गर्ने अत्रि वंशको म श्यावाश्व ऋषिको प्रार्थना सुन र सोमपान गर्नका लागि आओ।

**एवा वामह्व ऊतये यथाहुवन्त मेधिराः। इन्द्राग्नी सोमपीतये ॥९॥**

हे इन्द्र र अग्नि ! आत्मज्ञानीहरूले सोमपानका लागि तिमीलाई बोलाएझैं आफ्नो सुरक्षाका लागि हामी तिमीलाई बोलाउँछौं।

**आहं सरस्वतीवतोरिन्द्राग्न्योरवो वृणे। याभ्यां गायत्रमृच्यते ॥१०॥**

जुन इन्द्रदेव र अग्निदेवका लागि गायत्री छन्दका स्तोत्र उच्चारण हुन्छन्, उनीहरूद्वारा संरक्षित हुने आशा हामी गर्दछौं।

## [सूक्त - ३९]

**ऋषि** - नाभाक काण्व। **देवता** - अग्नी। **छन्द** - महापंक्ति।

**अग्निमस्तोष्यृग्मियमग्निमीळा यजध्यै। अग्निर्देवाँ अनक्तु**
**न उभे हि विदथे कविरन्तश्चरति दूत्यं नभन्तामन्यके समे ॥१॥**

यज्ञका निम्ति हामी ऋक्वेदका मन्त्रद्वारा पूजनीय अग्निदेवको प्रार्थना गर्दछौं। हामीले दिएको आहुतिले उनी देवतालाई आलोकित गरून्। क्रान्तदर्शी अग्निदेव मनुष्य र देवताका बीचमा सन्देशवाहक काम गर्दछन्। त्यसले हाम्रा सबै शत्रु नाश हुन्छन्।

**न्यग्ने नव्यसा वचस्तनूषु शंसमेषाम्। न्यराती रराव्णां**
**विश्वा अर्यो अरातीरितो युच्छन्त्वामुरो नभन्तामन्यके समे ॥२॥**

हे अग्निदेव ! हाम्रा शरीरमा रहेका रोगरूपी शत्रुलाई र हवि दान गर्नेहरूका शत्रुलाई नौला आयुधले नष्ट गराऊ। समस्त मूढ र दुष्ट दुराचारी शत्रु विनाश गर।

**अग्ने मन्मानि तुभ्यं कं घृतं न जुह्व आसनि। स देवेषु प्र**
**चिकिद्धि त्वं ह्यसि पूर्व्यः शिवो दूतो विवस्वतो नभन्तामन्यके समे ॥३॥**

हे अग्निदेव ! हामी तिम्रा मुखमा हर्षप्रदायक घिउको आहुति प्रदान गर्दै मननीय स्तोत्र उच्चारण गर्दछौं, त्यो ग्रहण गर। तिमी अत्यन्त प्राचीन, हितकारी, सम्पूर्ण ऐश्वर्यका स्वामी र देवताका सन्देशवाहक हौ। तिमी हाम्रा सम्पूर्ण शत्रु विनाश गर।

**तत्तदग्निर्वयो दधे यथायथा कृपण्यति। ऊर्जाहुतिर्वसूनां**
**शं च योश्च मयो दधे विश्वस्यै देवहूत्यै नभन्तामन्यके समे ॥४॥**

स्तोताले इच्छा गरेझैं अग्निदेव अन्न प्रदान गर्दछन्। स्तुतिले बोलाइने अग्निदेव याजकका लागि हितकारी सुख र रोगनिवारक क्षमता प्रदान गर्दछन्। यज्ञमा सबै देवताहरूसँगै आह्वान गरिने अग्निदेवले हाम्रा शत्रु नाश गरून्।

**स चिकेत सहीयसाग्निश्चित्रेण कर्मणा। स होता शश्वतीनां**
**दक्षिणाभिरभीवृत इनोति च प्रतीव्यं नभन्तामन्यके समे ॥५॥**

अग्निदेव आफ्ना सामर्थ्य र कार्यका विचित्रताले चिनिन्छन्। उनी यज्ञमा विद्यमान रहने र देवतालाई आह्वान गर्ने हुन्। उनी आफ्ना सम्पूर्ण शक्तिले सम्पन्न भएर आक्रमणका लागि शत्रुसम्म पुग्दछन् र उनीहरूको विनाश गर्दछन्।

**अग्निर्जाता देवानामग्निर्वेद मर्तानामपीच्यम्। अग्निः स**
**द्रविणोदा अग्निर्द्वारा व्यूर्णुते स्वाहुतो नवीयसा नभन्तामन्यके समे ॥६॥**

अग्निदेव मानिसका जीवनको रहस्य र देवताहरूको रहस्य जान्दछन्। तिनले नयाँ अन्नको आहुति ग्रहण गरेर समस्त ऐश्वर्य प्रदान गर्दछन् र सम्पूर्ण शत्रु नाश गर्दछन्। उनी बोलाइँदाखेरि सम्पूर्ण सम्पत्तिको ढोका खोलिदिन्छन्।

**अग्निर्देवेषु संवसुः स विक्षु यज्ञियास्वा। स मुदा काव्या**
**पुरु विश्वं भूमेव पुष्यति देवो देवेषु यज्ञियो नभन्तामन्यके समे ॥७॥**

अग्निदेव देवताहरूका बीचमा वास गर्दछन् र यज्ञकार्य गर्नेहरूका बीचमा यज्ञाग्निका रूपमा प्रकट हुन्छन्। पृथ्वीले जगत्लाई पोषण प्रदान गरेझैं अग्निदेव सम्पूर्ण कार्यलाई पुष्ट गराउँछन्। उनी महान् गुणले सम्पन्न भएका कारण पूजनीय छन्। उनले हाम्रा सबै शत्रु नाश गरिदिऊन्।

यो अग्निः सप्तमानुषः श्रियो विश्वेषु सिन्धुषु। तमागन्म त्रिपस्त्यं
मन्धातुर्दस्युहन्तममग्निं यज्ञेषु पूर्व्यं नभन्तामन्यके समे ॥८॥

अग्निदेव सातै द्वीप, सरिता र सबै मानिसमा व्याप्त रहन्छन्। तीनै लोकमा विद्यमान रहने अग्निदेव विद्वान् पुरुषको रक्षा गर्दछन्। दूला दुष्टको संहार गर्ने अग्निदेवलाई हामी यज्ञमा वरण गर्दछौं, किनभने उनी हाम्रा सबै शत्रु विनाश गर्दछन्।

अग्निस्त्रीणि त्रिधातून्या क्षेति विदथा कविः। स त्रीँरेकादशाँ
इह यक्षच्च पिप्रयच्च नो विप्रो दूतः परिष्कृतो नभन्तामन्यके समे ॥९॥

क्रान्तदर्शी अग्निदेव तीनै लोकमा निवास गर्दछन्। उनी देवताका सन्देशवाहक हुन्। उनी पवित्र भएर देवताकहाँ हवि पुऱ्याउँछन् र हामीलाई सन्तुष्ट पार्दछन्। उनले हाम्रा सबै शत्रु नाश गरिदिऊन्।

त्वं नो अग्न आयुषु त्वं देवेषु पूर्व्य वस्व एक इरज्यसि।
त्वामापः परिस्रुतः परि यन्ति स्वसेतवो नभन्तामन्यके समे ॥१०॥

हे पुरातन अग्निदेव ! तिमी देवतहरूमा सर्वश्रेष्ठ छौ र मानिसका स्वामी हौ। सर्वत्र प्रवाहित हुने जलधारा तिमीतिर गमन गर्दछन्। तिमी हाम्रा सबै शत्रु नाश गर।

[सूक्त - ४०]

ऋषि - नाभाक काण्व। देवता - इन्द्राग्नी। छन्द - महापंक्ति शक्वरी त्रिष्टुप्।

इन्द्राग्नी युवं सु नः सहन्ता दासथो रयिम्।
येन दृळ्हा समत्स्वा वीळु चित्साहिषीमह्यग्निर्वनेव वात इन्नभन्तामन्यके समे ॥

हे इन्द्र र अग्नि ! श्रेष्ठ सम्पत्ति प्रदान गर। अग्नि र वायु दुवै मिलेर वन भस्म गराएभैं हामी त्यसै सम्पत्तिले बलिष्ठ शत्रुको सेना विनाश गरौं।

नहि वां वव्रयामहेऽथेन्द्रमिद्यजामहे शविष्ठं नृणां नरम्। स नः कदा
चिदर्वता गमदा वाजसातये गमदा मेधसातये नभन्तामन्यके समे ॥२॥

नायकहरूमा सर्वश्रेष्ठ, शक्तिशाली हे इन्द्र र अग्नि ! तिमीहरू दुईलाई हामी उपेक्षा होइन, उपासना गर्दछौं। तिमीहरू अन्न आदि वैभव प्रदान गर्नका लागि आफ्ना अश्वद्वारा हाम्रा यज्ञमा कहिले आउँछौ ? हाम्रा शत्रु नाश होऊन्।

ता हि मध्यं भराणामिन्द्राग्नी अधिक्षितः। ता उ कवित्वना
कवी पृच्छ्यमाना सखीयते सं धीतमश्नुतं नरा नभन्तामन्यके समे ॥३॥

श्रेष्ठ नायक हे इन्द्र र अग्नि ! तिमीहरू आफ्ना विद्वत्ताका कारण सबैका लागि वरणीय छौ। मित्रताका इच्छुक आफ्ना भक्तले गरेको कर्म स्वीकार गर। तिमी रणक्षेत्रका बीचमा विद्यमान रहन्छौ। त्यसले गर्दा हाम्रा अन्य शत्रु आफैं नाश हुनेछन्।

अभ्यर्च नभाकवदिन्द्राग्नी यजसा गिरा। ययोर्विश्वमिदं
जगदियं द्यौः पृथिवी मह्युपस्थे बिभृतो वसु नभन्तामन्यके समे ॥४॥

इन्द्र र अग्नि दुवैमा समस्त जगत्, धर्ती र आकाश विद्यमान छन्। तिनीहरू ऐश्वर्य धारणकर्ता पनि हुन्। हे याजक हो ! नाभाक ऋषिले जस्तै तिमीहरू पनि इन्द्र र अग्निलाई यज्ञ र स्तोत्रले पूजा गर। उनका प्रभावले हाम्रा शत्रु नाश होऊन्।

प्र ब्रह्माणि नभाकवदिन्द्राग्निभ्यामिरज्यत। या सप्तबुध्नमर्णवं
जिह्मबारमपोर्णुत इन्द्र ईशान ओजसा नभन्तामन्यके समे ॥५॥

साधकहरू नाभाक ऋषिले जस्तै इन्द्र र अग्निको स्तुति गर्दछन्। उनीहरू जलका सात मुहान र सात महासागर आफ्नै बलले ओगटदै जलका धारा प्रवाहित गराउँछन्। इन्द्रदेव आफ्ना ओजले समस्त जगत् नियन्त्रित गर्ने ईश्वर हुनाले सबै शत्रु नाश होऊन्।

अपि वृश्च पुराणवद् व्रततेरिव गुष्पितमोजो दासस्य दम्भय।
वयं तदस्य सम्भृतं वस्विन्द्रेण वि भजेमहि नभन्तामन्यके समे ॥६॥

हे इन्द्रदेव ! उहिलेको जस्तै तिमी शत्रुलाई बिरुवाका नचाहिँदा हाँगाभैं छिमलिदेऊ। तिमी दस्युको ओज नष्ट गराऊ। तिम्रा सहयोगले असुरले जम्मा पारेको ऐश्वर्य हामीलाई प्राप्त होस् र हाम्रा अन्य शत्रु नाश होऊन्।

यदिन्द्राग्नी जना इमे विह्वयन्ते तना गिरा। अस्माकेभिर्नृभिर्वयं
सासह्याम पृतन्यतो वनुयाम वनुष्यतो नभन्तामन्यके समे ॥७॥

जुन मानिस आफ्ना धन र प्रार्थनाले इन्द्र र अग्निदेवलाई आह्वान गर्दछन्, उनीहरूसँग हामी आफ्ना पराक्रमी योद्धाका सहायताले शत्रुको सेना पराजित गर्दछौं। जुन व्यक्ति हामीसित प्रेम गर्दछन्, हामी पनि उनीहरूसित प्रेमपूर्ण व्यवहार गरौं र हाम्रा अन्य शत्रु नाश होऊन्।

या नु श्वेताववो दिव उच्चरात उप द्युभिः। इन्द्राग्न्योरनु व्रतमुहाना
यन्ति सिन्धवो यान्त्सीं बन्धादमुञ्चतां नभन्तामन्यके समे ॥८॥

उनै इन्द्र र अग्निदेव सद्गुणले सम्पन्न छन्। उनीहरू आफ्ना आलोकले द्युलोकमा सर्वत्र गमन गर्दछन्। उनीहरूले सरितालाई बन्धनमुक्त गरेर प्रवाहित गरे। उनीहरूकै कामअनुसार याजकहरू आचरण गर्दछन्। ती देवताहरूले हाम्रा शत्रु नाश गराऊन्।

पूर्वीष्ट इन्द्रोपमातयः पूर्वीरुत प्रशस्तयः सूनो हिन्वस्य हरिवः।
वस्वो वीरस्यापृचो या नु साधन्त नो धियो नभन्तामन्यके समे ॥९॥

हे वज्रधारी इन्द्रदेव ! आफ्ना वीरतापूर्ण कार्यले प्रसन्न गराउने योद्धालाई तिमी ऐश्वर्य प्रदान गर। तिम्रा अनेकौं नाम र अनेकौं स्तोत्र छन्। उनै स्तुतिले हाम्रो बुद्धि श्रेष्ठ भएको हो। तिमी सबै शत्रुको विनाश गर।

तं शिशीता सुवृक्तिभिस्त्वेषं सत्वानमृग्मियम्। उतो नु चिद्य
ओजसा शुष्णस्याण्डानि भेदति जेषत्स्वर्वतीरपो नभन्तामन्यके समे ॥१०॥

तेजले सम्पन्न इन्द्रदेवले आफ्ना ओजले शुष्ण नामका राक्षसका पुत्र संहार गरे। उनले ध्वनि गर्ने सरिता नियन्त्रित गरे। शक्तिशाली र मन्त्रले प्रार्थनीय उनै इन्द्रदेवलाई स्तुतिले समृद्ध गराऔं, त्यसो हुँदा उनले सबै शत्रु संहार गरुन्।

तं शिशीता स्वध्वरं सत्यं सत्वानमृत्वियम्। उतो नु चिद्य
ओहत आण्डा शुष्णस्य भेदत्यजैः स्वर्वतीरपो नभन्तामन्यके समे ॥११॥

हे स्तोता हो ! सर्वत्र गमन गर्ने, शुष्ण नामका राक्षसका पुत्र संहार गर्ने, हर्षप्रदायक जलप्रवाह नियन्त्रित गर्ने, श्रेष्ठ मार्गदर्शक, अविनाशी र प्रार्थनीय इन्द्रदेवलाई समृद्ध गराओ। त्यसो भएपछि उनले सबै शत्रु संहार गरुन्।

एवेन्द्राग्निभ्यां पितृवन्नवीयो मन्धातृवदङ्गिरस्वदवाचि।
त्रिधातुना शर्मणा पातमस्मान् वयं स्याम पतयो रयीणाम् ॥१२॥

हाम्रा पिता मान्धाता र अङ्गिरा ऋषिले जस्तै अग्नि र इन्द्रदेवका लागि नौलो स्तुति गरौं। उनीहरूले हामीलाई तीन पर्वका लागि ऐश्वर्यले सम्पन्न उपयुक्त आवास प्रदान गरुन्।

## [सूक्त - ४१]

ऋषि - नाभाक काण्व। देवता - वरुण। छन्द - महापंक्ति।

अस्मा ऊ षु प्रभूतये वरुणाय मरुद्भ्योऽर्चा विदुष्टरेभ्यः।
यो धीता मानुषाणां पश्वो गाइव रक्षति नभन्तामन्यके समे ॥१॥

हे स्तोता हो ! वरुणदेवले मानिस र पशु सबैलाई गाईको जस्तै सुरक्षा प्रदान गर्दछन्। ऐश्वर्यवान वरुणदेव र ज्ञानी मरुत्‌हरूको उपासना गर। उनले हाम्रा शत्रु नाश गरुन्।

तमू षु समना गिरा पितॄणां च मन्मभिः। नाभाकस्य प्रशस्तिभिर्यः
सिन्धूनामुपोदये सप्तस्वसा स मध्यमो नभन्तामन्यके समे ॥२॥

हामी आफ्ना असल स्तोत्रले वरुणदेवको स्तुति गर्दछौं, पितृहरूको स्तुति गर्दछौं। नाभाक ऋषिका स्तोत्रले सात सरिताले समृद्ध सात सागरको स्तुति गर्दछौं। उनले हाम्रा शत्रु नाश गरुन्।

स क्षपः परि षस्वजे न्युस्रो मायया दधे स विश्वं परि दर्शतः।
तस्य वेनीरनु व्रतमुषस्तिस्रो अवर्धयन्नभन्तामन्यके समे ॥३॥

दर्शनीय र अत्यन्त त्यागी वरुणदेव आफ्ना कर्मकौशलले समस्त संसार निर्माण गर्छन्। उनी रात्रि मिलाएर राख्दछन्। वृद्धिको कामना गर्ने व्यक्ति उनैलाई तीन उषामा संवर्द्धित गराउँछन्। उनले हाम्रा शत्रु नाश गरिदिऊन्।

यः ककुभो निधारयः पृथिव्यामधि दर्शतः ।
स माता पूर्व्यं पदं तद्वरुणस्य सप्त्यं स हि गोपा इवेर्यो नभन्तामन्यके समे ॥४॥

दर्शनीय वरुणदेवले पृथ्वीमा समस्त दिशाको स्थापना गरे, उनी सबैका स्वामी हुन्। उनको उच्च स्थान पहिलेदेखि नै निर्धारित छ। गोठालो जस्तै उनी सबैको रक्षा गर्दछन्। उनले हाम्रा शत्रु नाश गरिदिउन्।

यो धर्ता भुवनानां य उस्राणामपीच्या वेद नामानि गुह्या ।
कविः काव्या पुरु रूपं द्यौरिव पुष्यति नभन्तामन्यके समे ॥५॥

वरुणदेव सबै लोक धारण गर्दछन् र किरणको गोप्य नाम पनि जान्दछन्। उनैले द्युलोकजस्तै दूरदर्शी कविको ज्ञान परिपुष्ट गर्छन्। उनले हाम्रा शत्रु नाश गरिदिउन्।

यस्मिन् विश्वानि काव्या चक्रे नाभिरिव श्रिता । त्रितं जूती सपर्यत
व्रजे गावो न संयुजे युजे अश्वाँ अयुक्षत नभन्तामन्यके समे ॥६॥

चक्रको केन्द्रजस्तै जुन वरुणदेवमा सबै सद्ज्ञान आश्रित छन्, तीनै भुवनमा व्याप्त रहने उनै देवताको सबैले प्रार्थना गर्दछन्। गोठमा गाई पसेझैं शत्रु पराजित गर्नका लागि रथमा घोडा नारेर उनी लडाईंका क्षेत्रमा पुग्दछन्। उनले हाम्रा शत्रु नाश गरिदिउन्।

य आस्वत्क आशये विश्वा जातान्येषाम् । परि धामानि मर्मृशद्वरुणस्य
पुरो गये विश्वे देवा अनु व्रतं नभन्तामन्यके समे ॥७॥

वरुणदेव सबै पदार्थलाई छाताले झैं ढाक्दछन्। उनले समस्त देवताको बल समृद्ध गराउँछन्। सबै देवताले उनका काम अनुसरण गर्दछन्। उनैले हाम्रा शत्रु नाश गरून्।

स समुद्रो अपीच्यस्तुरो द्यामिव रोहति नि यदासु यजुर्दधे ।
स माया अर्चिना पदास्तृणान्नाकमारुहन्नभन्तामन्यके समे ॥८॥

समुद्रका स्वामी वरुणदेव सूर्यजस्तै आकाशमा आरूढ हुँदै सबै दिशामा कर्मरत हुन्छन्। उनी सबै मानिसलाई दान दिन्छन्। उनी राक्षसको माया आफ्ना दिव्य प्रकाशले नष्ट गराउँछन्। उनले हाम्रा शत्रु नाश गरिदिउन्।

यस्य श्वेता विचक्षणा तिस्रो भूमीरधिक्षितः । त्रिरुत्तराणि पप्रतुर्वरुणस्य
ध्रुवं सदः स सप्तानामिरज्यति नभन्तामन्यके समे ॥९॥

अन्तरिक्षमा विद्यमान रहने वरुणदेवको आफ्ना उज्ज्वल तेजद्वारा तीनै लोकलाई विस्तृत गराए। उनको स्थान अविचल छ। उनी जलका सात धारा नियन्त्रित गर्दछन्। उनले हाम्रा शत्रु नाश गरिदिउन्।

यः श्वेताँ अधिनिर्णिजश्चक्रे कृष्णाँ अनु व्रता । स धाम पूर्व्यं ममे
यः स्कम्भेन वि रोदसी अजो न द्यामधारयन्नभन्तामन्यके समे ॥१०॥

वरुणदेवले आफ्नो नियमअनुसार आफ्नो किरण दिउँसो सफा र राती कालो बनाएर त्यसपछि अन्तरिक्ष एवं पृथ्वीलोकलाई उसै किसिमले धारण गरे, जसरी आदित्यले द्युलोकलाई धारण गर्दछन्, उनले हाम्रा शत्रु नाश गरिदिउन्।

[सूक्त - ४२]

**ऋषि** - नाभाक काण्व। **देवता** - वरुण अश्विनीकुमार। **छन्द** - त्रिष्टुप् अनुष्टुप्।

अस्तभ्नाद् द्यामसुरो विश्ववेदा अमिमीत वरिमाणं पृथिव्याः ।
आसीदद्विश्वा भुवनानि सम्राड् विश्वेत्तानि वरुणस्य व्रतानि ॥१॥

वरुणदेव सर्वज्ञाता र बलवान् छन्। उनैले द्युलोक स्थापित गराए, पृथ्वी विस्तृत गराए र समस्त लोक नियन्त्रित गरेका छन्। सबै पुरुषार्थ वरुणदेवका नै हुन्।

एवा वन्दस्व वरुणं बृहन्तं नमस्या धीरममृतस्य गोपाम् ।
स नः शर्म त्रिवरूथं वि यंसत्पातं नो द्यावापृथिवी उपस्थे ॥२॥

हे स्तोताहरू हो। वरुणदेवको वन्दना गर। उनले अमृत सुरक्षित राख्दछन् र धैर्य धारण गर्दछन्। उनलाई नमस्कार गर। उनले हामीलाई तीन खण्डमा सुरक्षित आवास प्रदान गरून्। आकाश र पृथ्वीमा संरक्षण गरून्। हामी उनका काखमा निश्चिन्त रहन्छौं।

इमां धियं शिक्षमाणस्य देव क्रतु दक्षं वरुण सं शिशाधि।
यथाति विश्वा दुरिता तरेम सुतर्माणमधि नावं रुहेम ॥३॥

हे वरुणदेव ! यज्ञ गर्ने हाम्रा बुद्धिलाई श्रेष्ठ दिशा प्रदान गर। कर्मशीलता र बौद्धिक क्षमता बढाऊ। त्यसका सहयोगले हामी समस्त आपद्‌बाट पार हुन सकौं र सुगमताले उतार्न सक्ने नौकामा आरुढ होऔं।

आ वां ग्रावाणो अश्विना धीभिर्विप्रा अचुच्यवुः।
नासत्या सोमपीतये नभन्तामन्यके समे ॥४॥

सत्यका पालक हे अश्विनीकुमार हो ! विद्वान् पुरुष तिमीहरू दुईका लागि ढुङ्गाले पेलेर तयार गरेको सोमरस प्रस्तुत गर्दछन्। त्यसबाट तिमीहरूको अनुकम्पा प्राप्त गरेर आफ्ना सबै शत्रुलाई विनाश गर्न सफल हुन सकून्।

यथा वामत्रिरश्विना गीर्भिर्विप्रो अजोहवीत्।
नासत्या सोमपीतये नभन्तामन्यके समे ॥५॥

हे सत्यका पालक अश्विनीकुमार हो ! अत्रि ऋषिले आफ्ना स्तुतिले सोमरस पान गर्नका लागि तिमीहरूलाई आह्वान गरेझैं हामी आह्वान गर्दछौं। हाम्रा सबै शत्रु विनाश गर।

एवा वामह्व ऊतये यथाहुवन्त मेधिराः।
नासत्या सोमपीतये नभन्तामन्यके समे ॥६॥

सत्यका पालक हे अश्विनीकुमार हो ! विद्वान् पुरुषले तिमीहरूलाई सोमपान गर्न आह्वान गरेझैं आफ्नो संरक्षणका लागि हामी आह्वान गर्दछौं। हाम्रा सबै शत्रु संहार गर।

## [सूक्त - ४३]

ऋषि - विरूप आङ्गिरस। देवता - अग्नि। छन्द - गायत्री।

इमे विप्रस्य वेधसोऽग्नेरस्तृतयज्वनः। गिरः स्तोमास ईरते ॥१॥

मेधावी अग्निदेव यस सिङ्गो संसारका निर्माता हुन्। उनी आफ्ना याजकलाई कहिल्यै पनि नष्ट हुन दिँदैनन्। हामी स्तोताहरू यस्ता अग्निदेवको उपासना गर्दछौं।

अस्मै ते प्रतिहर्यते जातवेदो विचर्षणे। अग्ने जनामि सुष्टुतिम् ॥२॥

सबै पदार्थका ज्ञाता र सबैलाई प्रकाशित गराउने हे अग्निदेव ! तिमीबाट अनुदानको कामना गर्ने हामी याजकहरू तिम्रा निम्ति उत्तम स्तोत्र पाठ गर्दछौं।

आरोकाइव घेदह तिग्मा अग्ने तव त्विषः। दद्भिर्वनानि बप्सति ॥३॥

हे अग्निदेव ! प्रकाशले अन्धकार खाइदिएझैं तिम्रा तेजस्वी लप्काले वन खान्छ।

हरयो धूमकेतवो वातजूता उप द्यवि। यतन्ते वृथगग्नयः ॥४॥

धुवाँरूपी ध्वंजाले चिनिने अग्निदेवले रस हरण गर्दछन्। वायुद्वारा प्रेरित भएर ठाउँ सर्ने अग्निदेव आकाशमा पृथक्‌पृथक् रूपमा विचरण गर्दछन्।

एते त्ये वृथगग्नय इद्धासः समदृक्षत। उषसामिव केतवः ॥५॥

अग्निदेव विभिन्न रूपमा बल्दा बिहानीको उषाका लालीरूपी ध्वजाझैं सुन्दर हुन्छन्।

कृष्णा रजांसि पत्सुतः प्रयाणे जातवेदसः। अग्निर्यद्रोधति क्षमि ॥६॥

संसारका सबै पदार्थको ज्ञान भएका अग्निदेव धर्तीमा प्रकट भएर जब फिर्ता हुन्छन्, त्यस बेला धुलाका कणहरू पनि काला हुन्छन्।

धासिं कृण्वान ओषधीर्बप्सदग्निर्न वायति। पुनर्यन्तरुणीरपि ॥७॥

अग्निदेव अनेकौं किसिमका औषधि अन्नका रूपमा खान्छन्, तर उनी सन्तुष्ट हुँदैनन्। उनी सधैं युवा बनेर औषधिमा विद्यमान हुन्छन्।

जिह्वाभिरह नन्नमदर्चिषा जञ्जणाभवन्। अग्निर्वनेषु रोचते ॥८॥

अग्निदेव आफ्ना जिब्राले बोटबिरुवा चाट्दै आन्तरिक तेजले अत्यन्त आलोकित हुँदै वनमा सुशोभित हुन्छन्।

अप्स्वग्ने सधिष्टव सौषधीरनु रुध्यसे। गर्भे सञ्जायसे पुनः ॥९॥

हे अग्निदेव ! तिमी जलमा प्रवेश गर्दै र औषधिलाई स्थिरता प्रदान गर्दै उनैका बीचबाट उत्पन्न हुन्छौ।

उदग्ने तव तद् घृतादर्ची रोचत आहुतम्। निंसानं जुह्वो३ मुखे ॥१०॥

हे अग्निदेव ! तिम्रो लप्को घिउका रूपमा आहुति ग्रहण गर्छ। घिउले भरिएको चम्चा मुखले चाटेर सुन्दर देखिन्छौ।

उक्षान्नाय वशान्नाय सोमपृष्ठाय वेधसे। स्तोमैर्विधेमाग्नये ॥११॥

अन्न ग्रहण गर्ने र आहुति भक्षण गर्न योग्य सोमरूपी पीठ भएका अग्निदेवलाई महान् स्तोत्रले हामी पूजा गर्दछौं।

उत त्वा नमसा वयं होतर्वरेण्यक्रतो। अग्ने समिद्भिरीमहे ॥१२॥

देवताको आह्वान गर्ने हे महान् ज्ञानी अग्निदेव ! हामी विनम्रतापूर्वक समिधा प्रज्वलित गरेर तिमीलाई प्रार्थना गर्दछौं।

उत त्वा भृगुवच्छुचे मनुष्वदग्न आहुत। अङ्गिरस्वद्धवामहे ॥१३॥

पवित्र र आह्वान गर्न योग्य हे अग्निदेव ! भृगु र मनुले तिम्रो आह्वान गरेझैं हामी पनि तिमीलाई आह्वान गर्दछौं।

त्वं ह्यग्ने अग्निना विप्रो विप्रेण सन्त्सता। सखा सख्या समिध्यसे ॥१४॥

हे सखा, सज्जन र विद्वान् अग्निदेव ! तिमी उही गुणले अग्निमा प्रकट र शोभित छौ।

स त्वं विप्राय दाशुषे रयिं देहि सहस्रिणम्। अग्ने वीरवतीमिषम् ॥१५॥

हे अग्निदेव ! आहुति प्रदान गर्ने ज्ञानी पुरुषलाई हजारौं किसिमका धनधान्य र सन्तानले युक्त वैभव तिमी प्रदान गर।

अग्ने भ्रातः सहस्कृत रोहिदश्व शुचिव्रत। इमं स्तोमं जुषस्व मे ॥१६॥

दाजुभाइको जस्तै माया गर्ने, शक्तिशाली, तेजसम्पन्न, लप्का भएका र पवित्र व्रत धारण गर्ने हे अग्निदेव ! हाम्रो स्तुति तिमी स्नेहपूर्वक ग्रहण गर।

उत त्वाग्ने मम स्तुतो वाश्राय प्रतिहर्यते। गोष्ठं गाव इवाशत ॥१७॥

हे अग्निदेव ! गाई कराउँदै बाछातिर गएझैं हाम्रो स्तुति तिमीतिर आउँछ।

तुभ्यं ता अङ्गिरस्तम विश्वाः सुक्षितयः पृथक्। अग्ने कामाय येमिरे ॥१८॥

हे अग्निदेव ! अङ्गिराहरूमा तिमी सर्वश्रेष्ठ हौ। आफ्नो कामना पूरा गर्नका लागि सबै प्रजाले तिम्रो उपासना गर्दछन्।

अग्निं धीभिर्मनीषिणो मेधिरासो विपश्चितः। अद्मसद्याय हिन्विरे ॥१९॥

आफ्नो मन उचित दिशामा चलाउने विद्वान् र ज्ञानी पुरुष आफ्ना श्रेष्ठ कार्यद्वारा प्रत्येक घरमा विद्यमान रहने अग्निदेवलाई प्रदीप्त गर्दछन्।

तं त्वामज्मेषु वाजिनं तन्वाना अग्ने अध्वरम्। वह्निं होतारमीडते ॥२०॥

हे अत्यन्त शक्तिशाली, हवि वहन गर्ने र देवता बोलाउने अग्निदेव ! याजकहरू आफ्ना घरमा यज्ञ सम्पन्न गर्दै तिम्रो प्रार्थना गर्दछन्।

पुरुत्रा हि सदृङ्ङसि विशो विश्वा अनु प्रभुः। समत्सु त्वा हवामहे ॥२१॥

हे अग्निदेव ! तिमी सर्वत्र विराजमान रहने र समस्त प्राणीमा समान दृष्टि राख्ने हुनाले सबैका स्वामी हौ। त्यसो हुँदा नै हामी युद्धमा तिमीलाई आह्वान गर्दछौं।

तमीडिष्व य आहुतोऽग्निर्विभ्राजते घृतैः। इमं नः शृणवद्धवम् ॥२२॥

अग्निदेव घिउका हविले प्रज्वलित हुन्छन्। हे याजक हो ! तिमीहरू उनै अग्निदेवको नै प्रार्थना गर। किनभने हाम्रो प्रार्थना सुनिदिने उनै हुन्।

तं त्वा वयं हवामहे शृण्वन्तं जातवेदसम्। अग्ने घ्नन्तमप द्विषः ॥२३॥

हे अग्निदेव ! तिमी समस्त पदार्थको जानकारी भएका, हाम्रो स्तुति सुन्ने र सम्पूर्ण शत्रुको संहार गर्ने हौ। हामी तिमीलाई आह्वान गर्दछौं।

**विशां राजानमद्भुतमध्यक्षं धर्मणामिमम्। अग्निमीडे स उ श्रवत् ॥२४॥**
अग्निदेव असल कार्यका स्वामी र मानिसका सम्राट हुन्। हामी उनैको प्रार्थना गरौं।

**अग्निं विश्वायुवेपसं मर्यं न वाजिनं हितम्। सप्तिं न वाजयामसि ॥२५॥**
अग्निदेव सबै मानिसलाई चलाउने र शक्तिशाली मानिसजस्तै कल्याणकारी छन्। उनी अश्वजस्तै द्रुतगामी छन्। आफ्ना आहुतिले हामी उनलाई शक्तिशाली बनाउँछौं।

**घ्नन्मृध्राण्यप द्विषो दहन् रक्षांसि विश्वहा। अग्ने तिग्मेन दीदिहि ॥२६॥**
हे अग्निदेव ! हिंसक, ईर्ष्यालु र बाधक असुर जलाएर तीव्र आलोकमा प्रकट होऊ।

**यं त्वा जनास इन्धते मनुष्वदङ्गिरस्तम। अग्ने स बोधि मे वचः ॥२७॥**
हे अङ्गिराहरूमा सर्वश्रेष्ठ अग्निदेव ! मनुले झैं यी मानिसले पनि तिमीलाई प्रज्वलित गर्दछन्। हाम्रो प्रार्थना पनि उस्तै खालको ठान।

**यदग्ने दिविजा अस्यप्सुजा वा सहस्कृत। तं त्वा गीर्भिर्हवामहे ॥२८॥**
हे अग्निदेव ! तिमी आकाशमा उत्पन्न भएका हौ वा जलमा उत्पन्न भएका हौ या त बलले उत्पन्न भएका नै हौ। हामी स्तुति गर्दै तिमीलाई आह्वान गर्दछौं।

**तुभ्यं घेत्ते जना इमे विश्वाः सुक्षितयः पृथक्। धासिं हिन्वन्त्यत्तवे ॥२९॥**
हे अग्निदेव ! सबै साधक र समस्त प्रजा तिम्रो भक्षणका लागि अलगअलग हविष्यान्न प्रदान गर्दछन्।

**ते घेदग्ने स्वाध्योऽहा विश्वा नृचक्षसः। तरन्तः स्याम दुर्गहा ॥३०॥**
हे अग्निदेव ! तिम्रा कृपाले सत्कर्म गर्ने र सधैं असल पदार्थ खोज्ने गर्नाले हामी सबै विपदबाट पार लाग्दछौं।

**अग्निं मन्द्रं पुरुप्रियं शीरं पावकशोचिषम्। हृद्भिर्मन्द्रेभिरीमहे ॥३१॥**
अग्निदेव पवित्र भएर आलोक फिंजाउँदै, अनेकौंका प्रिय र यज्ञद्वारा अत्यन्त तेजसम्पन्न भएका छन्। हामी प्रसन्नता प्रदान गर्ने स्तुतिले उनलाई आनन्दित गराउँछौं।

**स त्वमग्ने विभावसुः सृजन्त्सूर्यो न रश्मिभिः। शर्धन्तमांसि जिघ्नसे ॥३२॥**
हे अग्निदेव ! तिमी उत्पन्न भएपछि सूर्यजस्तै शक्ति बढाउँदै अन्धकार नाश गर्दछौ।

**तत्ते सहस्व ईमहे दात्रं यन्नोपदस्यति। त्वदग्ने वार्यं वसु ॥३३॥**
हे अग्निदेव ! तिम्रो ग्रहण गर्न र दान गर्न योग्य ऐश्वर्य सधैं अविनाशी बनेर रहोस्। हामी तिमीसित उस्तै ऐश्वर्यको याचना गर्दछौं।

**[सूक्त – ४४]**

**ऋषि** – विरूप आङ्गिरस। **देवता** – अग्नि। **छन्द** – गायत्री।

**समिधाग्निं दुवस्यत घृतैर्बोधयतातिथिम्। आस्मिन् हव्या जुहोतन ॥१॥**
हे ऋत्विक् हो ! अतिथिजस्तै अग्निदेवलाई समिधाले सेवा गर। घिउका रूपमा श्रेष्ठ आहुति समर्पित गर।

**अग्ने स्तोमं जुषस्व मे वर्धस्वानेन मन्मना। प्रति सूक्तानि हर्य नः ॥२॥**
हे अग्निदेव ! तिमी हाम्रो मननीय स्तोत्र स्वीकार गर र समृद्धि प्राप्त गर। तिमी हाम्रा स्तोत्रको कामना गर।

**अग्निं दूतं पुरो दधे हव्यवाहमुप ब्रुवे। देवाँ आ सादयादिह ॥३॥**
देवताको सन्देशवाहकका रूपमा आहुति पुर्‍याउने अग्निदेवलाई हामी स्थापना गर्दछौं र उनको प्रार्थना गर्दछौं। उनले यस यज्ञमण्डपमा देवता बोलाइदिऊन्।

**उत्ते बृहन्तो अर्चयः समिधानस्य दीदिवः। अग्ने शुक्रास ईरते ॥४॥**
हे तेजस्वी अग्निदेव ! उचित किसिमले प्रदीप्त, महानता प्रेरित गर्ने तिम्रो लप्का वृद्धि प्राप्त गर्दछ।

**उप त्वा जुह्वो३ मम घृताचीर्यन्तु हर्यत। अग्ने हव्या जुषस्व नः ॥५॥**
पूजा गर्न योग्य हे अग्निदेव ! घिउले परिपूर्ण पात्र तिमीलाई प्राप्त होस्। तिमी हाम्रो आहुति स्वीकार गर।

मन्द्रं होतारमृत्विजं चित्रभानुं विभावसुम्। अग्निमीडे स उ श्रवत् ॥६॥

आनन्द प्रदायक, देवतालाई आह्वान गर्ने, ऋतुअनुसार यज्ञ गर्ने, तेजयुक्त, प्रकाशमान अग्निदेवलाई हामी स्तुति गर्दछौं।

प्रत्नं होतारमीड्यं जुष्टमग्निं कविक्रतुम्। अध्वराणामभिश्रियम् ॥७॥

देवता बोलाइदिने, स्तुतियोग्य, सेवायोग्य, अत्यन्त विद्वान् र यज्ञ अलङ्कृत गर्ने प्राचीन अग्निदेवको प्रार्थना हामी गर्दछौं।

जुषाणो अङ्गिरस्तमेमा हव्यान्यानुषक्। अग्ने यज्ञं नय ऋतुथा ॥८॥

हे अङ्गिरावंशी श्रेष्ठ अग्निदेव ! यज्ञ सम्पादित गर्दै समयअनुसार आहुति सेवन गर।

समिधान उ सन्त्य शुक्रशोच इहा वह। चिकित्वान् दैव्यं जनम् ॥९॥

हे पूजा गर्ने योग्य र पवित्र तेज भएका अग्निदेव ! तिमी सर्वज्ञाता र दर्शनीय आलोक भएका छौ। देवताहरूलाई हाम्रा यस यज्ञमा लिएर आऊ।

विप्रं होतारमद्रुहं धूमकेतुं विभावसुम्। यज्ञानां केतुमीमहे ॥१०॥

ज्ञानले सम्पन्न, देवतालाई यज्ञमा बोलाउने, धुवाँरूपी ध्वजा भएका, अत्यन्त तेजले सम्पन्न, विद्रोह नगर्ने र यज्ञको ध्वजारूपी अग्निदेवलाई हामी स्तुति गर्दछौं।

अग्ने नि पाहि नस्त्वं प्रति ष्म देव रीषतः। भिन्धि द्वेषः सहस्कृत ॥११॥

हे शक्तिसम्पन्न, तेजस्वी अग्निदेव ! याजकलाई तिमी हिंसक शत्रुबाट सुरक्षा गर र हामीसित ईर्ष्या गर्नेलाई नष्ट गराऊ।

अग्निः प्रत्नेन मन्मना शुम्भानस्तन्वं स्वाम्। कविर्विप्रेण वावृधे ॥१२॥

तेजस्वी स्वरूपमा सुशोभित, मेधावी अग्निदेवलाई ऋत्विक्‌हरू पुरातन स्तोत्रले प्रज्वलित गर्दछन्।

ऊर्जो नपातमा हुवेऽग्निं पावकशोचिषम्। अस्मिन्यज्ञे स्वध्वरे ॥१३॥

ऊर्जा खस्न नदिने, पवित्र बनाउने, दीप्तिमान् अग्निदेवलाई उत्तम यज्ञमा आह्वान गर्छौं।

स नो मित्रमहस्त्वमग्ने शुक्रेण शोचिषा। देवैरा सत्सि बर्हिषि ॥१४॥

पूज्य, मित्रजस्ता हे अग्निदेव ! सफा ज्वाला र तेजले पूर्ण भएर देवताहरूसँग यस यज्ञमा प्रतिष्ठित होऊ।

यो अग्निं तन्वो३ दमे देवं मर्तः सपर्यति। तस्मा इद्दीदयद्वसु ॥१५॥

ऐश्वर्यको अभिलाषा गर्ने व्यक्तिले आफ्ना घरमा अग्निदेवको सत्कार गर्दा उनले ऐश्वर्य प्रदान गर्दछन्।

अग्निर्मूर्धा दिवः ककुत्पतिः पृथिव्या अयम्। अपां रेतांसि जिन्वति ॥१६॥

सर्वश्रेष्ठ देवता, आकाशका उच्चतम स्थानमा प्रतिष्ठित, पृथ्वीका स्वामी अग्निदेवमा ओज स्थापित गरिएको छ।

उदग्ने शुचयस्तव शुक्रा भ्राजन्त ईरते। तव ज्योतींष्यर्चयः ॥१७॥

हे अग्निदेव ! स्वच्छ, उज्ज्वल र प्रकाशित ज्योतिले तिम्रो तेज प्रवाहित गराउँछ।

ईशिषे वार्यस्य हि दात्रस्याग्ने स्वर्पतिः। स्तोता स्यां तव शर्मणि ॥१८॥

हे अग्निदेव ! तिमी स्वर्गलोकका स्वामी, वरण गर्न योग्य र दान दिन योग्य धनका अधिष्ठाता हौ। तिमीले प्रदान गरेको सुख भोग्दै हामी सधैं तिम्रै प्रशंसक बनिरहौं।

त्वामग्ने मनीषिणस्त्वां हिन्वन्ति चित्तिभिः। त्वां वर्धन्तु नो गिरः ॥१९॥

हे अग्निदेव ! मनीषीहरू प्रार्थना गर्दै श्रेष्ठ कर्मले तिमीलाई हर्षित गराउँछन्। हाम्रा प्रार्थनाले तिमीलाई समृद्ध गराओस्।

अदब्धस्य स्वधावतो दूतस्य रेभतः सदा। अग्नेः सख्यं वृणीमहे ॥२०॥

हे अविनाशी र सामर्थ्यवान् अग्निदेव ! तिमी देवताका सन्देशवाहक र ज्ञानका उपदेशक हौ। हामी तिम्रो मित्रता स्वीकार गर्दछौं।

अग्निः शुचिव्रततमः शुचिर्विप्रः शुचिः कविः। शुची रोचत आहुतः ॥२१॥

हे पवित्र ज्ञानी, अत्यन्त शुभ कर्म गर्ने र क्रान्तदर्शी अग्निदेव ! पवित्रतापूर्वक प्रदान गरेको आहुतिले तिमी सुशोभित हुन्छौ।

उत त्वा धीतयो मम गिरो वर्धन्तु विश्वहा। अग्ने सख्यस्य बोधि नः ॥२२॥
हे अग्निदेव ! सत्कर्म र स्तुतिले तिमीलाई समृद्ध गराऊन्। हाम्रो सख्यभाव बुझिदेऊ।

यदग्ने स्यामहं त्वं त्व वा घा स्या अहम्। स्युष्टे सत्या इहाशिषः ॥२३॥
हे अग्निदेव ! तिमीमा समर्पित भएर तिम्रै हुन पाऔं र तिमी हाम्रा बन। तिम्रो आशीष हामीलाई लागोस्।

वसुर्वसुपतिर्हि कमस्यग्ने विभावसुः। स्याम ते सुमतावपि ॥२४॥
हे अग्निदेव ! तिमी आलोक सम्पन्न, सबैका पालनकर्ता र सम्पूर्ण ऐश्वर्यका स्वामी हौ। हामी तिम्रो इच्छाअनुसार विवेकपूर्ण आचरण गरौं।

अग्ने धृतव्रताय ते समुद्रायेव सिन्धवः। गिरो वाश्रास ईरते ॥२५॥
हे सत्कर्मका धारक अग्निदेव ! हाम्रो सुन्दर प्रार्थना तिमीकहाँ समुद्रमा नदीझैं जान्छन्।

युवानं विश्पतिं कविं विश्वादं पुरुवेपसम्। अग्निं शुम्भामि मन्मभिः ॥२६॥
यज्ञ आदि विभिन्न सत्कर्म गर्ने, सधैं युवा रहने र आहुति सेवन गर्ने विद्वान् अग्निदेवलाई आफ्ना स्तुतिले समृद्ध गर्दछौं।

यज्ञानां रथ्ये वयं तिग्मजम्भाय वीडवे। स्तोमैरिषेमाग्नये ॥२७॥
तिखा लप्का भएका, यज्ञका प्रमुख र पराक्रमी अग्निदेवलाई हामी आफ्ना स्तोत्रले प्रार्थना गर्दछौं।

अयमग्ने त्वे अपि जरिता भूतु सन्त्य। तस्मै पावक मृळय ॥२८॥
पवित्र बनाउने, पूजनीय हे अग्निदेव ! हामी स्तोताहरू तिमीलाई विभिन्न किसिमले वन्दना गर्दछौं। हामीलाई तिमी सुख प्रदान गर।

धीरो ह्यस्यद्मसद् विप्रो न जागृविः सदा। अग्ने दीदयसि द्यवि ॥२९॥
हे ज्ञानी र धैर्यवान् अग्निदेव ! तिमी आहुति सेवन गर्दै प्रजाका हितमा सधैं जागृत रहन्छौ। तिमी आकाशमा आलोकित हुन्छौ।

पुराग्ने दुरितेभ्यः पुरा मृध्रेभ्यः कवे। प्र ण आयुर्वसो तिर ॥३०॥
हे आश्रय प्रदाता मेधावी अग्निदेव ! पाप र हिंसाबाट रक्षा गरेर हाम्रो आयु बढाइदेऊ।

[सूक्त – ४५]

ऋषि – त्रिशोक काण्व। देवता – इन्द्र इन्द्राग्नी। छन्द – गायत्री।

आ घा ये अग्निमिन्धते स्तृणन्ति बर्हिरानुषक्। येषामिन्द्रो युवा सखा ॥१॥
यज्ञाग्नि प्रज्वलित गराउने याजक आफ्ना मित्र चिरयुवा इन्द्रदेवलाई यज्ञशालामा पवित्र आसन प्रदान गर्दछन्।

बृहन्निदिध्म एषां भूरि शस्तं पृथुः स्वरुः। येषामिन्द्रो युवा सखा ॥२॥
ऋषिका नजिकै समिधा पर्याप्त छ। स्तोत्र पनि असङ्ख्य छन्। चिरयुवा इन्द्रदेव सधैं ऋषिहरूका मित्र बनेर रहन्छन्।

अयुद्ध इद्युधा वृतं शूर आजति सत्वभिः। येषामिन्द्रो युवा सखा ॥३॥
इन्द्रदेव मित्र भएका साधकले युद्ध नगरीकनै सैन्यबलयुक्त शत्रु पराजित गर्न सक्छन्।

आ बुन्दं वृत्रहा ददे जातः पृच्छद्वि मातरम्। क उग्राः के ह शृण्विरे ॥४॥
वृत्र मार्ने इन्द्रदेवले जन्मँदै हातमा धनुषवाण लिएका थिए र मातासित यस संसारमा सबैभन्दा पराक्रमी वीर को होला भनेर सोधेका थिए।

प्रति त्वा शवसी वदद् गिरावप्सो न योधिषत्। यस्ते शत्रुत्वमाचके ॥५॥
हे इन्द्रदेव ! शक्तिसम्पन्न माताले तिमीसित शत्रुता गर्ने शत्रु पर्वतमा हात्तीजस्तो भएर विचरण गर्दछ भनेकी थिइन्।

उत त्वं मघवञ्छृणु यस्ते वष्टि ववक्षि तत्। यद्वीडयासि वीडु तत् ॥६॥
हे धनवान् इन्द्रदेव ! तिमीसित याचना गर्ने व्यक्तिलाई तिमी त्यो सबै प्रदान गर, जसले तिमी शक्तिशाली बनेका छौ। ऊ बलवान् हुन्छ त्यसैले हाम्रो प्रार्थना सुन।

यदाजिं यात्याजिकृदिन्द्रः स्वश्वयुरुप। रथीतमो रथीनाम् ॥७॥
इन्द्रदेवले आफ्ना गतिला अश्व जोतेर युद्ध गर्न रथ लिएर रणक्षेत्रमा गएका बेला अन्य रथीहरूका बीचमा उनी महारथीजस्तै सुशोभित हुन्छन्।

वि षु विश्वा अभियुजो वज्रिन्विष्वग्यथा वृह। भवा नः सुश्रवस्तमः ॥८॥
हे वज्रधारी इन्द्रदेव ! आफ्ना प्रजा जसरी भए पनि हरेक किसिमले समृद्ध गराऊ। तिमी हाम्रा लागि उत्तम अन्नले सम्पन्न भइराख।

अस्माकं सु रथं पुर इन्द्रः कृणोतु सातये। न यं धूर्वन्ति धूर्तयः ॥९॥
हाम्रा मनले रहर गरेको वस्तु प्रदान गर्नका लागि दुष्ट मानिसले मार्न नसक्ने इन्द्रदेवले आफ्नो श्रेष्ठ रथ अगाडि बढाऊन् र यज्ञस्थलमा उपस्थित होऊन्।

वृज्याम ते परि द्विषोऽरं ते शक्र दावने। गमेमेदिन्द्र गोमतः ॥१०॥
हे शक्तिशाली इन्द्रदेव ! हामी तिम्रा शत्रुका बन्धनमा कहिल्यै पनि नपरौं। अनेकौं गाईसँगै रोजेको धन प्रदान गर्दा हामी तिम्रै सामु विद्यमान रहौं।

शनैश्चिद्यन्तो अद्रिवोऽश्वावन्तः शतग्विनः। विवक्षणा अनेहसः ॥११॥
हे वज्रधारी इन्द्रदेव हामी बिस्तारैसित प्रगति गर्दै सयौं गाई र अश्वले युक्त धनले सम्पन्न हाऔं र पापरहित होऔं।

ऊर्ध्वा हि ते दिवेदिवे सहस्रा सूनृता शता। जरितृभ्यो विमंहते ॥१२॥
हे इन्द्रदेव ! तिमी यजमानलाई सयौं वा हजारौं किसिमका विभिन्न ऐश्वर्य प्रदान गर्दछौ।

विद्मा हि त्वा धनञ्जयमिन्द्र दृढहा चिदारुजम्। आदारिणं यथा गयम् ॥१३॥
हे इन्द्रदेव ! तिमी धन जित्नका लागि बलिया किल्ला पनि ध्वस्त गराउँछौ र शत्रु संहार गर्दछौ। हामी तिमीलाई संरक्षण प्रदान गर्ने घरजस्तै ठान्दछौं।

ककुहं चित्त्वा कवे मन्दन्तु धृष्णविन्दवः। आ त्वा पणिं यदीमहे ॥१४॥
हे शत्रुसंहारक क्रान्तदर्शी इन्द्रदेव ! हामीले तिमीसित धनको कामना गर्दा हाम्रो सोमरस आनन्ददायक होस्।

यस्ते रेवाँ अदाशुरिः प्रममर्ष मघत्तये। तस्य नो वेद आ भर ॥१५॥
हे ऐश्वर्यवान् इन्द्रदेव ! अपार वैभवले सम्पन्न भए पनि लोभी भएर तिमीसित द्रोह गर्दछ भने त्यस मानिसको ऐश्वर्य हामीलाई देऊ।

इम उ त्वा चक्षते सखाय इन्द्र सोमिनः। पुष्टावन्तो यथा पशुम् ॥१६॥
पशु पाल्नेले हातमा घाँस लिएर स्नेहपूर्वक पशुतिर हेरेझैं तिमीलाई तृप्त गर्ने याजक सोम आदि हातमा लिएर तिमीतिर हेरिरहन्छन्।

उत त्वाबधिरं वयं श्रुत्कर्णं सन्तमूतये। दूरादिह हवामहे ॥१७॥
हे इन्द्रदेव ! तिमी ध्वनि सुन्नमा अति नै सिपालु र सक्षम छौ, बहिरा होइनौ। आफ्नो सुरक्षाका लागि हामी तिमीलाई परैबाट पुकारा गर्दछौं।

यच्छुश्रूया इमं हवं दुर्मर्षं चक्रिया उत। भवेरापिर्नो अन्तमः ॥१८॥
हे इन्द्रदेव ! हाम्रो पुकारा सुनेर आफ्ना असीम सामर्थ्य प्रकट गर र हाम्रा नजिकै आएर प्रिय बन्धु होऊ।

यच्चिद्धि ते अपि व्यथिर्जगन्वांसो अमन्महि। गोदा इदिन्द्र बोधि नः ॥१९॥
हे इन्द्रदेव ! हामी दुःखले आर्त्तिंदै तिम्रा शरणमा आएर र प्रार्थना गर्दा तिमी जागरुक भएर हामीलाई गाई प्रदान गर।

आ त्वा रम्भं न जिव्रयो ररभ्मा शवसस्पते। उश्मसि त्वा सधस्थ आ ॥२०॥
सामर्थ्यवान् हे अग्निदेव ! वृद्ध व्यक्तिले लौराको सहारा लिएझैं हामी तिम्रो सहारा लिन्छौं। हामी यज्ञमण्डपमा तिम्रा उपस्थितिको कामना गर्दछौं।

स्तोत्रमिन्द्राय गायत पुरुनृम्णाय सत्वने। नकिर्यं वृण्वते युधि ॥२१॥
हे स्तोता हो ! पराक्रमी इन्द्रदेवलाई रणक्षेत्रमा कसैले परास्त गर्न सक्दैन, तिमीहरू उनै इन्द्रदेवको गुणगान गर।

अभि त्वा वृषभा सुते सुतं सृजामि पीतये तृम्पा व्यश्नुही मदम् ॥२२॥
हे बलशाली इन्द्रदेव ! यस सोमयज्ञमा तिम्रा लागि सोमरस समर्पित गर्दछौं। तिमी यो तृप्तिकारक सोमरस पान गर।

**मा त्वा मूरा अविष्यवो मोपहस्वान आ दभन्। माकीं ब्रह्मद्विषो वनः ॥२३॥**
हे इन्द्रदेव ! रक्षणको कामना गर्ने र उपहास गर्ने अज्ञानीको कुनै प्रभाव तिमीमाथि नपरोस्। तिमी ज्ञानसित द्वेष गर्नेलाई कुनै पनि सहायता नगर।

**इह त्वा गोपरीणसा महे मन्दन्तु राधसे। सरो गौरो यथा पिब ॥२४॥**
हे इन्द्रदेव ! होताले ऐश्वर्य प्राप्त गर्नका लागि गाईको दुध मिसाएका सोमरसको हविले तिमीलाई प्रार्थना गर्दछन्। मृगले तलाउमा जल पिएझैं तिमी सोमरस पान गर।

**या वृत्रहा परावति सना नवा च चुच्युवे। ता संसत्सु प्र वोचत ॥२५॥**
हे वृत्रहन्ता इन्द्रदेव ! प्राचीन कालमा तिमीले पुरातन र नवीन धन प्राप्त गरेका थियौ, त्यस धनको विवेचना तिमी सभागृहमा गर।

**अपिबत् कद्रुवः सुतमिन्द्रः सहस्रबाह्वे। अत्रादेदिष्ट पौंस्यम् ॥२६॥**
कद्रुले निकालेको सोमरस इन्द्रदेवले पान गरे र हजारौं भुजा भएका बलशाली शत्रु संहार गरे। यसबाट उनको दर्शनीय पराक्रम प्रकट भयो।

**सत्यं तत्तुर्वशे यदौ विदानो अह्नवाय्यम्। व्यानट् तुर्वणे शमि ॥२७॥**
हे इन्द्रदेव ! तिमीले तुर्वश र यादवको वास्तविक कार्य जानेर रणक्षेत्रमा अह्नवाय नामको शत्रु वध गरेका थियौ।

**तरणिं वो जनानां त्रदं वाजस्य गोमतः। समानमु प्र शंसिषम् ॥२८॥**
सज्जनलाई बाधाबाट पार लगाउने, शत्रुलाई भयभीत गराउने, पशुरूपी धनले सम्पन्न, अन्न दान गर्ने र उन्नतिशील इन्द्रदेवलाई हामी स्तुति गर्दछौं।

**ऋभुक्षणं न वर्तव उक्थेषु तुग्र्यावृधम्। इन्द्रं सोमे सचा सुते ॥२९॥**
सोम पेल्न लागेका स्तोता एकै साथ मिलेर जल वृद्धि गराउने महान् इन्द्रदेवको स्तुति गर्दछन्। उनीबाट ऐश्वर्यको कामना गर्दछन्।

**यः कृन्तदिद्वि योन्यं त्रिशोकाय गिरिं पृथुम्। गोभ्यो गातुं निरेतवे ॥३०॥**
इन्द्रदेवले त्रिशोकका लागि जल प्रवाहित गराउन मेघ भत्काए। उनले पृथ्वीमा किरणको मार्ग पनि बनाए।

**यद्दधिषे मनस्यसि मन्दानः प्रेदियक्षसि। मा तत्करिन्द्र मृडय ॥३१॥**
हे इन्द्रदेव ! हर्षित भएर जुन ऐश्वर्य धारण गर्दछौ, जसको कामना गर्दछौ र जुन दान गर्दछौ, त्यस्तो ऐश्वर्य हामीलाई किन प्रदान गर्दैनौ ? हामीलाई समृद्ध गराऊ।

**दभ्रं चिद्धि त्वावतः कृतं शृण्वे अधि क्षमि। जिगात्विन्द्र ते मनः ॥३२॥**
हे इन्द्रदेव ! तिमीले गरेको सानो काम पनि धर्तीमा विख्यात हुन्छ। त्यसैले तिमी हामीमाथि कृपा गर।

**तवेदु ताः सुकीर्तयोऽसन्नुत प्रशस्तयः। यदिन्द्र मृडयासि नः ॥३३॥**
हे इन्द्रदेव ! तिमीले हामीलाई हर्षित गर्दा तिमी नै यशस्वी र प्रशंसनीय हुन्छौ।

**मा न एकस्मिन्नागसि मा द्वयोरुत त्रिषु। वधीर्मा शूर भूरिषु ॥३४॥**
हे इन्द्रदेव ! हामीबाट कुनै एक अपराध हुँदैमा हाम्रो संहार नगर। दुई अथवा तीन अथवा त्यसभन्दा बढी अपराध भए पनि हामीलाई दुःख नदेऊ।

**बिभया हि त्वावत उग्रादभिप्रभङ्गिणः। दस्मादहमृतीषहः ॥३५॥**
हे शत्रुमाथि प्रहार गर्ने र पापीको विनाश गर्ने पराक्रमी इन्द्रदेव ! तिमी शत्रु परास्त गर्नमा सक्षम छौ। तिमीबाट हामी भयभीत नहोऔं।

**मा सख्युः शूनमा विदे मा पुत्रस्य प्रभूवसो। आवृत्वद्भूतु ते मनः ॥३६॥**
सम्पदाले सम्पन्न हे इन्द्रदेव ! हामी आफ्ना साथीभाइ वा पुत्रका लागि ऐश्वर्य याचना गर्दैनौं। हामी त तिम्रो मनलाई नै आफूतिर आकृष्ट गर्न खोज्दछौं।

**को नु मर्या अमिथितः सखा सखायमब्रवीत्। जहा को अस्मदीषते ॥३७॥**
हे मनुष्यहरू हो ! क्रोधरहित, सखारूप इन्द्रदेवले आफ्ना मित्रसित आफूले कुनै निर्दोष मानिसलाई हनन गरें कि ? मबाट को पर भाग्दछ ? भनेर सोधे।

**एवारे वृषभा सुतेऽसिन्वन्भूर्यावयः। श्वघ्नीव निवता चरन् ॥३८॥**
हे शक्तिशाली इन्द्रदेव ! पर्वतमा रहने सिकारीले सिकार फेला पारेझैं सोम पेल्ने गरेका एवारलाई तिमीले प्रशस्त सम्पत्ति प्रदान गऱ्यौ।

**आ त एता वचोयुजा हरी गृभ्णे सुमद्रथा। यदीं ब्रह्मभ्य इद्ददः ॥३९॥**
हे इन्द्रदेव ! भन्नेबित्तिकै रथमा नारिने तिम्रा अश्वलाई हामी बोलाउँछौं। यो सम्पत्ति तिमीले ब्रह्मनिष्ठ साधकका लागि प्रदान गरेका हौ।

**भिन्धि विश्वा अप द्विषः परि बाधो जही मृधः। वसु स्पार्हं तदा भर ॥४०॥**
हे इन्द्रदेव ! हाम्रा सबै हिंसक शत्रु विनाश गरेर हामीदेखि पर हटाइदेऊ र उनको ऐश्वर्य हाम्रा नजिक ल्याइदेऊ।

**यद्वीडाविन्द्र यत्स्थिरे यत्पर्शाने पराभृतम्। वसु स्पार्हं तदा भर ॥४१॥**
हे इन्द्रदेव ! हामीलाई तिमी स्थायी सम्पत्ति प्रदान गर, त्यो पुष्ट र स्थिर भई भूमिमा विद्यमान रहोस् र कसैले स्पर्श नगरेको होस्।

**यस्य ते विश्वमानुषो भूरेर्दत्तस्य वेदति। वसु स्पार्हं तदा भर ॥४२॥**
हे इन्द्रदेव ! तिमीले दिएको वैभव सबै मानिस उचित ढङ्गले चिन्दछन्, त्यस्तै वाञ्छित ऐश्वर्य हामीलाई पर्याप्त प्रदान गर।

[सूक्त - ४६]

**ऋषि** - वश अश्व्य। **देवता** - पृथुश्रवा वायु। **छन्द** - गायत्री ककुप् बृहती द्विपदा।

**त्वावतः पुरूवसो वयमिन्द्र प्रणेतः। स्मसि स्थातर्हरीणाम् ॥१॥**
धनवान्, श्रेष्ठ नायक र अश्वका स्वामी हे इन्द्रदेव ! तिमीजस्तो रक्षक अर्को कोही पनि छैन। तिमीप्रति हामी समर्पित भएर रहौं।

**त्वां हि सत्यमद्रिवो विद्म दातारमिषाम्। विद्म दातारं रयीणाम् ॥२॥**
वज्रधारी हे इन्द्रदेव ! तिमीलाई हामी अन्न र ऐश्वर्य प्रदाता मान्दछौं। यो वास्तविक हो।

**आ यस्य ते महिमानं शतमूते शतक्रतो। गीर्भिर्गृणन्ति कारवः ॥३॥**
हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! तिमी सयौं खालका रक्षण साधनले सम्पन्न छौ। स्तोताहरू स्तुति गर्दै तिम्रो महानताको वर्णन गर्दछन्।

**सुनीथो घा स मर्त्यो यं मरुतो यमर्यमा। मित्रः पान्त्यद्रुहः ॥४॥**
मरुत्हरू, मित्र र अर्यमादेव द्रोहरहित भएर जुन साधकको रक्षा गर्दछन्, त्यो साधक निश्चित रूपले श्रेष्ठ मार्गमा गमन गर्ने हुन्छ।

**दधानो गोमदश्ववत्सुवीर्यमादित्यजूत एधते। सदा राया पुरुस्पृहा ॥५॥**
हामी स्तोताहरू इन्द्रद्वारा संरक्षित भएर गाई र अश्वले सम्पन्न सामर्थ्यवान् हुन्छौं। हामी मन परेको धन उनीबाट प्राप्त गरेर समृद्ध हुनेछौं।

**तमिन्द्रं दानमीमहे शवसानमभीर्वम्। ईशानं राय ईमहे ॥६॥**
शक्तिले सम्पन्न, निर्भीक र सबैका अधिष्ठाता इन्द्रदेवबाट दान र ऐश्वर्य याचना गर्दछौं।

**तस्मिन्हि सन्त्यूतयो विश्वा अभीरवः सचा।**
**तमा वहन्तु सप्तयः पुरूवसुं मदाय हरयः सुतम् ॥७॥**
रक्षा गर्ने निर्भीक सेना इन्द्रदेवका आश्रित भएर सँगसँगै निवास गर्छन्। खुसी गराउने द्रुतगामी घोडाले उनलाई सोमयागका निकट ल्याऊन्।

**यस्ते मदो वरेण्यो य इन्द्र वृत्रहन्तमः।**
**य आददिः स्वर्नृभिर्यः पृतनासु दुष्टरः ॥८॥**
हे इन्द्रदव ! तिम्रो मद वरण गर्न योग्य छ। शत्रु संहारक त्यही हो, शत्रुको धन त्यसले खोस्दछ र लडाईमा परास्त नहुने खालको छ।

**यो दुष्टरो विश्ववार श्रवाय्यो वाजेष्वस्ति तरुता।**
**स नः शविष्ठ सवना वसो गहि गमेम गोमति व्रजे ॥९॥**
इन्द्रदेवको शौर्य रणक्षेत्रमा शत्रुद्वारा अजेय, शक्तिप्रदायक र विपत्तिबाट मुक्ति दिलाउने खालको

छ। वरण गर्न योग्य शक्तिले सम्पन्न र सबैलाई निवास प्रदान गर्ने हे इन्द्रदेव ! तिमी हाम्रा यज्ञमा आऊ। हामी गाईले भरिएका गोठमा पस्न पाऔं।

**गव्यो षु णो यथा पुराश्वयोत रथया। वरिवस्य महामह ॥१०॥**

हे इन्द्रदेव ! सधैंको जस्तै हामीलाई उत्तम गाई, असल अश्वले युक्त रथ र प्रतिष्ठापूर्ण धन प्रदान गर्ने इच्छाले तिमी हाम्रा नजिकै आऊ।

**नहि ते शूर राधसोऽन्तं विन्दामि सत्रा।**
**दशस्या नो मघवन्नू चिदद्रिवो धियो वाजेभिराविथ ॥११॥**

हे पराक्रमी इन्द्रदेव ! वास्तवमा तिम्रो सम्पत्ति असीम छ। हे धनवान् इन्द्रदेव ! हामीलाई तिमी ऐश्वर्य प्रदान गर। हे वज्रधारी इन्द्रदेव ! तिमी आफ्ना सामर्थ्यले हाम्रा कर्मको रक्षा गर।

**य ऋष्वः श्रावयत्सखा विश्वेत् स वेद जनिमा पुरुष्टुतः।**
**तं विश्वे मानुषा युगेन्द्रं हवन्ते तविषं यतस्रुचः ॥१२॥**

महान् इन्द्रदेव कीर्तिवान्हरूका सखा र अनेकौंद्वारा प्रशंसित छन्। उनी हाम्रा सबै जन्मका ज्ञाता पनि हुन्। उनै शक्तिशाली इन्द्रदेवका लागि स्रुक पात्रमा हवि प्रदान गर्ने हामी याजकहरू सधैं यजन गर्दछौं।

**स नो वाजेष्वविता पुरूवसुः पुरः स्थाता। मघवा वृत्रहा भुवत् ॥१३॥**

धनवान् इन्द्रदेव अनेकौंलाई निवास प्रदान गरेर वृत्र संहार गर्छन्। रणक्षेत्रमा सधैं अगुवा रहेर हाम्रो संरक्षण गरुन्।

**अभि वो वीरमन्धसो मदेषु गाय गिरा महा विचेतसम्।**
**इन्द्रं नाम श्रुत्यं शाकिनं वचो यथा ॥१४॥**

हे उद्गाताहरू हो ! हितकारी, असुरजयी, सोमरसले आनन्द प्राप्त गर्ने, वीर, मेधावी र कीर्तिमान इन्द्रदेवलाई विशेष स्तोत्रले स्तुति गर।

**ददी रेक्णस्तन्वे ददिर्वसु ददिर्वाजेषु पुरुहूत वाजिनम्। नूनमथ ॥१५॥**

अनेकौं तिरबाट बोलाइने हे इन्द्रदेव ! हामीलाई पुष्टिदायक धन प्रदान गर। श्रेष्ठ आवास देऊ र रणक्षेत्रमा शक्तिले सम्पन्न असीम उत्साह प्रदान गर।

**विश्वेषामिरज्यन्तं वसूनां सासह्वांसं चिदस्य वर्पसः। कृपयतो नूनमत्यथ ॥१६॥**

हे स्तोताहरू हो ! समस्त ऐश्वर्य नियन्त्रित गर्ने र शक्तिशाली शत्रुलाई पनि परास्त गर्ने इन्द्रदेवलाई तिमीहरू राम्रोसित प्रार्थना गर।

**महः सु वो अरमिषे स्तवामहे मीळ्हुषे अरङ्गमाय जग्मये।**
**यज्ञेभिर्गीर्भिर्विश्वमनुषां मरुतामियक्षसि गाये त्वा नमसा गिरा ॥१७॥**

हामी उनै शक्तिशाली, सज्जनको सहायता गर्ने, सबै ठाउँमा पुग्ने इन्द्रदेवलाई प्रचुर अन्न प्राप्त गर्नका लागि यजनीय स्तोत्रले प्रार्थना गर्दछौं। तिमीहरू पनि उनैको प्रार्थना गर। हे इन्द्रदेव ! तिमी सबै मानिस र मरुत्हरूका उपास्य हौ। हामी आफ्ना विनम्र वचनले तिम्रो गुणगान गर्दछौं।

**ये पातयन्ते अज्मभिर्गिरीणां स्नुभिरेषाम्।**
**यज्ञं महिष्वणीनां सुम्नं तुविष्वणीनां प्राध्वरे ॥१८॥**

मरुत्हरू आफ्ना शक्तिप्रवाहले सम्पन्न भएर पर्वतीय जल ओरालोतिर प्रवाहित गर्दछन्, उनै गर्जनशील मरुत्हरूका निम्ति हामी यजन गर्दछौं। उनीहरूका कृपाले यस श्रेष्ठ यज्ञमा सुख प्राप्त गर्दछौं।

**प्रभङ्गं दुर्मतीनामिन्द्र शविष्ठा भर।**
**रयिमस्मभ्यं युज्यं चोदयन्मते ज्येष्ठं चोदयन्मते ॥१९॥**

प्रेरक बुद्धिले सम्पन्न, शक्तिशाली हे इन्द्रदेव ! तिमी दुर्बुद्धिग्रस्त मानिसको विनाश गर्दछौ। हामीलाई तिमी उत्तम ऐश्वर्यले परिपूर्ण गराऊ।

**सनितः सुसनितरुग्र चित्र चेतिष्ठ सूनृत।**
**प्रासहा सम्राट् सहुरिं सहन्तं भुज्युं वाजेषु पूर्व्यम् ॥२०॥**

दानशील, शक्तिशाली र सत्यभाषी हे इन्द्रदेव ! तिमी अद्‌भुत सामर्थ्यले सम्पन्न र शत्रुको विनाश गर्ने सम्राट् हौ। हामीलाई तिमी रणमा शत्रु परास्त गर्ने र सहनशक्ति प्रदान गर्ने सम्पत्ति प्रदान गर।

आ स एतु य ईवदाँ अदेवः पूर्तमाददे।
यथा चिद्वशो अश्व्यः पृथुश्रवसि कानीतेऽस्या व्युष्याददे ॥२१॥
अश्व्य पनि भनिने वशले उषा कालमा कानीत भनेर बोलाइने पृथुश्रवावाट वैभव प्राप्त गरे। यस्तो दान गर्ने ती वश यहाँ आइदिऊन्।

षष्टिं सहस्राश्व्यस्यायुतासनमुष्ट्रानां विंशतिं शता।
दश श्यावीनां शता दश त्र्यरुषीणां दश गवां सहस्रा ॥२२॥
मैले साठी हजार र दस हजार अश्व त्यसपछि बीस सय उँट प्राप्त गरें। श्याम वर्णका दस सय घोडी र तीन ठाउँमा प्रकाशित दस हजार गाई पनि प्राप्त गरें।

दश श्यावा ऋधद्रयो वीतवारास आशवः। मथ्रा नेमिं नि वावृतुः ॥२३॥
हाम्रा रथको धुरो दस वटा काला वर्णका घोडाले तान्दछन्। ती घोडा अत्यन्त तीव्रगामी, शक्तिशाली र शत्रुलाई खल्बल्याउने खालका छन्।

दानासः पृथुश्रवसः कानीतस्य सुराधसः।
रथं हिरण्ययं ददन् मंहिष्ठः सूरिरभूद्वर्षिष्ठमकृत श्रवः ॥२४॥
पृथुश्रवाका पुत्र कानीत अत्यन्त धनवान् छन्। उनले हामीलाई सुनौलो रथ प्रदान गरे। उनी सर्वश्रेष्ठ दानी र विद्वान् छन्। हामीले उनका कीर्तिलाई समृद्ध गरायौं।

आ नो वायो महे तने याहि मखाय पाजसे।
वयं हि ते चकृमा भूरि दावने सद्यश्चिन्महि दावने ॥२५॥
हे वायु ! महान् ऐश्वर्य प्राप्त गर्नका लागि हामी तिम्रै प्रार्थना गर्दछौं। हामीलाई तिमी प्रचुर सम्पत्ति र यज्ञीय बल प्रदान गर्नका लागि आऊ।

यो अश्वेभिर्वहते वस्त उस्रास्त्रिः सप्त सप्ततीनाम्।
एभिः सोमेभिः सोमसुद्भिः सोमपा दानाय शुक्रपूतपाः ॥२६॥
सोमरस पान गर्ने, बल बढाउने र शुद्ध गराउने वायुदेव आफ्ना अश्वमा यात्रा गर्दछन् र तीन गुने सात पटक, अनि त्यसको सत्तरी गुना गाईलाई आश्रय प्रदान गर्दछन्। सोम पेल्नेहरूलाई उनी दान दिन्छन्।

यो म इमं चिदु त्मनामन्दच्चित्रं दावने।
अरट्वे अक्षे नहुषे सुकृत्वनि सुकृत्तराय सुक्रतुः ॥२७॥
हामीलाई विलक्षण दान दिएर आनन्द मान्ने सत्कर्म परायण यशस्वी वायुले युवा अक्ष, नहुष, सुकृत र सुकृत्तरलाई प्रेरित पनि गर्दछन्।

उचथ्ये३ वपुषि यः स्वराडुत वायो घृतस्नाः।
अश्वेषितं रजेषितं शुनेषितं प्राज्म तदिदं नु तत् ॥२८॥
तेजस्वी वायु उचथ्य र वपुका राज्यमा स्वप्रकाशित छन्। उनले घोडा, उँट र कुकुरवाट प्रेरित भएर प्रदान गरेको अन्न यही हो।

अध प्रियमिषिराय षष्टिं सहस्रासनम्। अश्वानामिन्न वृष्णाम् ॥२९॥
यस वेला ऐश्वर्य प्रदान गर्ने शासकवाट हामीले साठी हजार शक्तिशाली अश्व दानका रूपमा ग्रहण गरेका छौं।

गावो न यूथमुप यन्ति वध्रय उप मा यन्ति वध्रयः ॥३०॥
जसरी गाईहरू आफ्ना बथानमा हिँड्दछन्, उसै गरी पृथुश्रवाले प्रदान गरेका गोरुहरू हामीसित हिँड्दछन्।

अध यच्चारथे गणे शतमुष्ट्राँ अचिक्रदत्। अध श्वित्नेषु विंशतिं शता ॥३१॥
त्यसका पछि लागेर विचरण गर्ने उँटका बथानबाट सय वटा उँट र सेतो वर्णका गाईमा दुई हजार गाई दान गरिए।

शतं दासे बल्बूथे विप्रस्तरुक्ष आ ददे।
ते ते वायविमे जना मदन्तीन्द्रगोपा मदन्ति देवगोपाः ॥३२॥
हामी गाई र घोडा पाल्ने ब्राह्मण हौं। हामीले बल्बूथ नामका सयौं गाई र अश्व प्राप्त गरेका थियौं। हे वायु ! यी सबै तिम्रै आश्रयमा छन्। यी स्तोताहरू इन्द्र र अन्य देवताद्वारा संरक्षित भएर खुसी हुन्छन्।

अथ स्या योषणा मही प्रतीची वशमश्व्यम्। अधिरुक्मा वि नीयते ॥३३॥
उनै दाताले सुनौला आभूषणले सजिएका वन्दनीय नारीलाई अश्व्यका पुत्र वशका सम्मुख पुऱ्याए।

[सूक्त - ४७]

**ऋषि** – त्रित आप्त्य। **देवता** – आदित्यगण आदित्यगण उषा। **छन्द** – महापङ्क्ति।

**महि वो महतामवो वरुण मित्र दाशुषे। यमादित्या अभि**
**द्रुहो रक्षथा नेमघं नशदनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१॥**

हे मित्र र वरुणदेव ! तिमीहरूले हविप्रदाता यजमानलाई संरक्षण प्रदान गर्ने रक्षण साधन अत्यन्त श्रेष्ठ छ। हे आदित्यहरू हो ! विद्रोही शत्रुबाट जोगाएका यजमानलाई पापले दुःख दिन सक्दैन।

**विदा देवा अघानामादित्यासो अपाकृतिम्। पक्षा वयो**
**यथोपरि व्यस्मे शर्म यच्छतानेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥२॥**

हे आदित्य हो ! हाम्रो दुःख कस्ता खालको छ भन्ने थाहा छ। पक्षीले पँखेटाले छोपेर बच्चालाई सुरक्षा दिएझैं पापरहित र श्रेष्ठ रक्षणसाधनले हामीलाई सुख प्रदान गर।

**व्यस्मे अधि शर्म तत्पक्षा वयो न यन्तन। विश्वानि**
**विश्ववेदसो वरूथ्या मनामहेऽनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥३॥**

सर्वज्ञाता हे देवताहरू हो ! चराले पँखेटाले छोपेर बच्चालाई सुरक्षा प्रदान गरेझैं हामीलाई आफ्ना पापरहित र श्रेष्ठ रक्षणसाधनबाट सुरक्षा गर भन्ने आशा गर्दछौं।

**यस्मा अरासत क्षयं जीवातुं च प्रचेतसः। मनोर्विश्वस्य**
**घेदिम आदित्या राय ईशतेऽनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥४॥**

हे देवता हो ! चेतना सञ्चार गराउने आदित्यले जीवनको साधन र आवास प्रदान गर्दै मानिसका लागि संसारको ऐश्वर्यमाथि पापरहित र श्रेष्ठ रक्षणसाधनले शासन गर्छन्।

**परि णो वृणजन्नघा दुर्गाणि रथ्यो यथा। स्यामेदिन्द्रस्य**
**शर्मण्यादित्यानामुतावस्यनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥५॥**

रथ तान्ने घोडाले दुर्गम पथ छोडेझैं हामी पापपूर्ण बाटो छोड्दछौं। हामी इन्द्रदेवका आश्रित र आदित्यबाट पापरहित र श्रेष्ठ रक्षणसाधनले संरक्षित भएर रहौं।

**परिह्वृतेदना जनो युष्मादत्तस्य वायति। देवा अदभ्रमाश**
**वो यमादित्या अहेतनानेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥६॥**

कष्ट सहन गरेर तिम्रो उपासना गर्ने व्यक्तिले ऐश्वर्य प्राप्त गर्दछन्। हे द्रुतगतिले गमन गर्ने देवताहरू हो ! तिमीहरू जसका नजिक जान्छौ, त्यसले पापरहित र श्रेष्ठ रक्षणसाधनले असीमित ऐश्वर्य पाउँछ।

**न तं तिग्मं चन त्यजो न द्रासदभि तं गुरु। यस्मा उ शर्म**
**सप्रथ आदित्यासो अराध्वमनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥७॥**

हे आदित्यगण ! तिमीहरूका आश्रयमा रहेका व्यक्तिलाई धारिला हतियारले पनि दुःख दिन सक्दैनन्। ठूला आपद्‌बाट पनि तिमीहरूका पापरहित र श्रेष्ठ रक्षणसाधनले जोगिएर सुखी रहन्छन्।

**युष्मे देवा अपि ष्मसि युध्यन्तइव वर्मसु। यूयं महो न**
**एनसो यूयमर्भादुरुष्यतानेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥८॥**

हे देवताहरू हो ! कवच धारण गर्ने योद्धा सुरक्षित रहेझैं तिमीलाई समर्पित भएर हामी पापरहित र श्रेष्ठ रक्षणसाधनले सानाठूला पापबाट जोगिन्छौं।

**अदितिर्न उरुष्यत्वदितिः शर्म यच्छतु। माता मित्रस्य**
**रेवतोऽर्यम्णो वरुणस्य चानेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥९॥**

सम्पत्तिवान् अर्यमा, मित्र र वरुणदेवकी माता अदितिले हामीलाई सुरक्षित गरुन्। उनले पापरहित र श्रेष्ठ रक्षणसाधनले सुख प्रदान गरुन्।

**यद्देवाः शर्म शरणं यद्भद्रं यदनातुरम्। त्रिधातु यद्वरूथ्यं१**
**तदस्मासु वि यन्तनानेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१०॥**

हे देवताहरू हो ! तिमीहरू आफ्ना आश्रयको सुख हामीलाई प्रदान गर। ती तीन किसिमले धारण गर्ने योग्य क्षमताहरू कल्याणकारी, रोगमुक्त, पापरहित र श्रेष्ठ रक्षणसामर्थ्यले युक्त होऊन्।

आदित्या अव हि ख्यताधि कूलादिव स्पशः। सुतीर्थमर्वतो
यथानु नो नेषथा सुगमनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥११॥

हे आदित्यगण ! खोलाकिनारमा बसेका मानिसले तलतिर हेरेझैं तल रहेका हामीतिर हेर। सजिलो घाटबाट अश्व लगेझैं हामीलाई पापरहित र श्रेष्ठ रक्षणसाधनले सजिलो मार्गबाट लैजाओ।

नेह भद्रं रक्षस्विने नावयै नोपया उत। गवे च भद्रं धेनवे
वीराय च श्रवस्यतेऽनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१२॥

हे आदित्यहरू हो ! असुर, विद्वेष गर्ने, उपद्रवीको हित नगरीकन सधैं गाई, पराक्रमी र कीर्तिको कामना गर्ने मानिसकै पापरहित र श्रेष्ठ रक्षणसाधनले कल्याण गर।

यदाविर्यदपीच्यं देवासो अस्ति दुष्कृतम्। त्रिते तद्विश्वमाप्त्य
आरे अस्मद्दधातनानेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१३॥

हे देवताहरू हो ! हाम्रा प्रत्यक्ष र अप्रत्यक्ष पाप हामीबाट पर हटाओ। पापरहित र श्रेष्ठ रक्षणसाधनले त्रितआप्त्यसित कुनै पाप नरहून्।

यच्च गोषु दुष्ष्वप्न्यं यच्चास्मे दुहितर्दिवः। त्रिताय
तद्विभावर्याप्त्याय परा वहानेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१४॥

हे सूर्यपुत्री उषादेवी ! तिमी हाम्रा र गाईका दूषित भावनाहरू पापरहित र श्रेष्ठ रक्षणसाधनले हटाइदेऊ भन्ने निवेदन म त्रितआप्त्य ऋषि गर्दछु।

निष्कं वा घा कृणवते स्रजं वा दुहितर्दिवः। त्रिते दुष्ष्वप्न्यं
सर्वमाप्त्ये परि दद्मस्यनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१५॥

हे सूर्यपुत्री उषादेवी ! म त्रितआप्त्य ऋषिका प्रार्थनाले सधाउने र सजाउनेका दूषित विचार पापरहित र श्रेष्ठ रक्षणसाधनले हटाइदेऊ।

तदन्नाय तदपसे तं भागमुपसेदुषे। त्रिताय च द्विताय
चोषो दुष्ष्वप्न्यं वहानेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१६॥

हे उषादेवी ! तिमी अन्न लिने र दिने अथवा त्यो अन्नको भाग ग्रहण गर्ने त्रितआप्त्यका दूषित विचारहरू पापरहित र श्रेष्ठ रक्षणसाधनले हटाइदेऊ।

यथा कलां यथा शफं यथ ऋणं सन्नयामसि। एवा दुष्ष्वप्न्यं
सर्वमाप्त्ये सं नयामस्यनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१७॥

यज्ञमा क्रमैसित वस्तु दान गरेझैं ऋणको साँवा र व्याज क्रमैसित चुक्ता गरेझैं आफ्ना सबै दूषित विचार त्रितआप्त्य ऋषि पापरहित र श्रेष्ठ रक्षणसाधनले मेटाउछन्।

अजैष्माद्यासनाम चाभूमानागसो वयम्। उषो यस्माद्दुष्ष्वप्न्यादभैष्माप
तदुच्छत्वनेहसो व ऊतयः सुऊतयो व ऊतयः ॥१८॥

हे उषादेवी ! आज हामी विजयी भएर लाभान्वित र पापरहित हुनेछौं। दूषित विचारले हामी डराएका थियौं हामीलाई त्यसबाट पापरहित र श्रेष्ठ रक्षणसाधनले मुक्त गराऊ।

[सूक्त - ४८]

ऋषि - प्रगाथ काण्व। देवता - सोम। छन्द - त्रिष्टुप् जगती।

स्वादोरभक्षि वयसः सुमेधाः स्वाध्यो वरिवोवित्तरस्य।
विश्वे यं देवा उत मर्त्यासो मधु ब्रुवन्तो अभि सञ्चरन्ति ॥१॥

सोमरसलाई सबै देवता र मानिसले मिठो भन्दै प्रशंसा गर्दै ग्रहण गर्दछन्। स्वादिष्ट र सम्माननीय त्यही सोमरस हामी श्रेष्ठ स्वाध्यायी र मेधावी याजकहरू सेवन गर्दछौं।

अन्तश्च प्रागा अदितिर्भवास्यवयाता हरसो दैव्यस्य।
इन्द्रविन्द्रस्य सख्यं जुषाणः श्रौष्टीव धुरमनु राय ऋध्याः ॥२॥

हे अविनाशी सोमरस ! तिमी देवताका अन्तःकरणमा प्रवेश गरेर उनीहरूको क्रोध नष्ट गराउँछौ। रथमा नियोजित भएका अश्वले भारी वहन गरेझैं तिमी इन्द्रदेवको मैत्री ग्रहण गरेर याजकलाई ऐश्वर्य प्रदान गर्नका लागि संलग्न हुन्छौ।

अपाम सोममृता अभूमागन्म ज्योतिरविदाम देवान्।
किं नूनमस्मान्कृणवदरातिः किमु धूर्तिरमृत मर्त्यस्य ॥३॥

हे सोम ! तिमी यज्ञको समृद्धि बढाउँछौ। हामी यजमानहरू तिम्रा सहयोगले सूर्यरूपी ज्योतिले ज्योतित भएर अमरत्व प्राप्त गरौं। हामी भूलोकबाट दिव्यलोकमा आरोहण गरौं। हामी देवताको ज्योतिर्मय स्वर्गलोक हेर्न सक्षम होऔं।

शं नो भव हृद आ पीत इन्दो पितेव सोम सूनवे सुशेवः।
सखेव सख्य उरुशंस धीरः प्र ण आयुर्जीवसे सोम तारीः ॥४॥

हे सोम ! पिताका लागि पुत्र र मित्रका लागि अर्को मित्र नै सुखदायक भएझैं तिमी हाम्रा हृदयका लागि सुखकारी हौ। हे धेरै तिरबाट प्रशंसित सोम ! तिमी बुद्धिले सम्पन्न छौ, हाम्रा जीवनमा सुख र आयु वृद्धि गराऊ।

इमे मा पीता यशस उरुष्यवो रथं न गावः समनाह पर्वसु।
ते मा रक्षन्तु विस्रसश्चरित्रादुत मा स्रामाद्यवयन्त्विन्दवः ॥५॥

गाडामा गोरु नारेझैं सोमले हाम्रा सबै अङ्ग जोडून्। कीर्तिवान् सोमले संरक्षणको आशा गर्ने हामीलाई चरित्र भ्रष्ट हुनबाट रक्षा गरुन् र रोगबाट मुक्त गरुन्।

अग्निं न मा मथितं सं दिदीपः प्र चक्षय कृणुहि वस्यसो नः।
अथा हि ते मद आ सोम मन्ये रेवाँ इव प्र चरा पुष्टिमच्छ ॥६॥

हे सोम ! हामीले पान गरेपछि तिमी प्रज्वलित अग्निजस्तो भएर आलोक र तेज सम्पन्न गर। हामीलाई तिमी ऐश्वर्यवान् बनाऊ। त्यसपछि तिम्रो आनन्दका लागि हामी प्रार्थना गर्दछौं। तिमी ऐश्वर्यवान् भएर सबै ठाउँमा जाँदै पोषण प्राप्त गर।

इषिरेण ते मनसा सुतस्य भक्षीमहि पित्र्यस्येव रायः।
सोम राजन् प्र ण आयूंषि तारीरहानीव सूर्यो वासराणि ॥७॥

कामनायुक्त मनले पेलेर तयार गरिएको सोमरस पैतृक सम्पत्तिजस्तै सेवन गर्दछौं। हे तेजसम्पन्न सोम ! सूर्यले दिउँसो प्रकाश वृद्धि गरेझैं हाम्रो आयु वृद्धि गर।

सोम राजन् मृडया नः स्वस्ति तव स्मसि व्रत्या३ स्तस्य विद्धि।
अलर्ति दक्ष उत मन्युरिन्दो मा नो अर्यो अनुकामं परा दाः ॥८॥

हे तेजसम्पन्न सोम ! हाम्रो हित गर्नका लागि प्रसन्न गराऊ। हामी तिम्रै व्रतशील हौं भन्ने तथ्य तिमी बुझ। हे सोम ! विवेकयुक्त जोस प्रदान गरेर शत्रुको अधीनमा नपार।

त्वं हि नस्तन्वः सोम गोपा गात्रेगात्रे निषसत्था नृचक्षाः।
यत्ते वयं प्रमिनाम व्रतानि स नो मृड सुषखा देव वस्यः ॥९॥

हे शरीरका संरक्षक र मानिसका निरीक्षक सोम ! तिमी हाम्रा अङ्गप्रत्यङ्गमा समाहित होऊ। हामीले तिम्रो नियम भङ्ग गरे पनि अभिन्न सखा बनेर सुख प्रदान गर।

ऋदूदरेण सख्या सचेय यो मा न रिष्येद्धर्यश्व पीतः।
अयं यः सोमो न्यधाय्यस्मे तस्मा इन्द्रं प्रतिरमेम्यायुः ॥१०॥

श्रेष्ठ अश्वले युक्त हे इन्द्रदेव ! पान गरेपछि दुःख नदिने र सजिलोसित पच्ने सोमरसको मित्रता हामी प्राप्त गरौं। आफ्ना पेटमा पसेको सोमरस लामो समयसम्म रहिरहोस् भनेर हामी प्रार्थना गर्दछौं।

अप त्या अस्थुरनिरा अमीवा निरत्रसन्तमिषीचीरभैषुः।
आ सोमो अस्माँ अरुहद्विहाया अगन्म यत्र प्रतिरन्त आयुः ॥११॥

हामीलाई गतिलो सोमरस प्राप्त भएको छ। ज्यादै मुस्किलले हट्ने र धेरै दुःख दिने रोग अब नाश होलान्। हामी भयमुक्त होऔं। सोमले आयु बढाउँने ठाउँमा हामी जाऔं।

यो न इन्दुः पितरो हृत्सु पीतोऽमर्त्यो मर्त्यां आविवेश।
तस्मै सोमाय हविषा विधेम मृडीके अस्य सुमतौ स्याम ॥१२॥

हे पितृहरू हो ! पान गर्दा मानिसका हृदयमा पस्ने अविनाशी सोमरसका आहुतिले हामी सेवा गर्दछौं। हामी उनको श्रेष्ठ बुद्धि र कृपा प्राप्त गरौं।

त्वं सोम पितृभिः संविदानोऽनु द्यावापृथिवी आ ततन्थ।
तस्मै त इन्दो हविषा विधेम वयं स्याम पतयो रयीणाम् ॥१३॥

हे सोम तिमी पितृहरूका शक्तिसँग मिलेर दिव्यलोक र भूलोकसम्म फैलिन्छौ। हामी हविष्य समर्पित गर्दै तिम्रो सेवा गर्दछौं। हामीलाई तिमी धनधान्यले सम्पन्न गराऊ।

त्रातारो देवा अधि वोचता नो मा नो निद्रा ईशत मोत जल्पिः।
वयं सोमस्य विश्वह प्रियासः सुवीरासो विदथमा वदेम ॥१४॥

हे रक्षा गर्ने देवता हो ! हामीलाई मिठो शब्दले उपदेश गर। खराब विचारका अधीनमा हामी नपरौं। हामी सधैं सोमरसका प्रियपात्र बनौं। श्रेष्ठ सन्तानले सम्पन्न भएर हामी सोमरसलाई प्रार्थना गर्दछौं।

त्वं नः सोमविश्वतो वयोधास्त्वं स्वर्विदा विशा नृचक्षाः।
त्वं न इन्द ऊतिभिः सजोषाः पाहि पश्चातादुत वा पुरस्तात् ॥१५॥

हे सोम ! सबै तिरबाट हामीलाई अन्न प्रदान गर। सुखदाता र सर्वदर्शी भएर हामीभित्र प्रवेश गर। हर्षित भएर आफ्ना रक्षणसाधनले हामीलाई सुरक्षा प्रदान गर।

## [अथ वालखिल्यम्]

### [सूक्त – ४९]

ऋषि – प्रस्कण्व काण्व। देवता – इन्द्र। छन्द – प्रगाथ।

अभि प्र वः सुराधसमिन्द्रमर्च यथा विदे।
यो जरितृभ्यो मघवा पुरूवसुः सहस्रेणेव शिक्षति ॥१॥

हे ऋत्विक्हरू हो ! ऐश्वर्यवान् इन्द्रदेव स्तुति गर्नेलाई अनेकौं किसिमका श्रेष्ठ धनले सम्पन्न बनाउँछन्। उत्तम धन प्राप्त गर्नका लागि सकेसम्म उनैको अर्चना गर।

शतानीकेव प्र जिगाति धृष्णुया हन्ति वृत्राणि दाशुषे।
गिरेरिव प्र रसा अस्य पिन्विरे दत्राणि पुरुभोजसः ॥२॥

शत्रुका सेनाले आक्रमण गर्ने बेलामा सेनापतिले आफ्ना सेनाको संरक्षण गरेझैं श्रेष्ठ कार्यमा आफ्नो साधन लगाउनेलाई इन्द्रदेवले संरक्षण गर्दछन्। यस्तो साधन सबैको तिर्खा मेट्ने पर्वतको जलजस्तै लाभदायक हुन्छ।

आ त्वा सुतास इन्दवो मदा य इन्द्र गिर्वणः।
आपो न वज्रिन्नन्वोक्यं सरः पृणन्ति शूर राधसे ॥३॥

हे वज्रधारी, शूरवीर इन्द्रदेव ! आनन्दप्रदायक सोमरस तिम्रै लागि पेलेर तयार गरिएको छ। पानीले पोखरी भरेझैं सोमरसले तिमीलाई परिपूर्ण गरोस्।

अनेहसं प्रतरणं विवक्षणं मध्वः स्वादिष्ठमीं पिब।
आ यथा मन्दसानः किरासि नः प्र क्षुद्रेव त्मना धृषत् ॥४॥

शत्रु विनाश गर्ने हे इन्द्रदेव ! तिमी दोषरहित र प्रशंसनीय सोमरस पान गर। हर्षित भएर हामीलाई सामान्यलाई झैं ऐश्वर्य प्रदान गर।

आ नः स्तोममुप द्रवद्धियानो अश्वो न सोतृभिः।
यं ते स्वधावन्त्स्वदयन्ति धेनव इन्द्र कण्वेषु रातयः ॥५॥

हे सन्तुष्टि प्रदान गर्ने इन्द्रदेव ! तिम्रा गाई र कण्व वंशीले दिएका साधनले श्रेष्ठ बनेका यज्ञमा सोम पेल्नेले गरेका स्तुतिले प्रेरित भएर अश्वजस्तै द्रुतगतिमा तिमी आऊ।

उग्रं न वीरं नमसोप सेदिम विभूतिमक्षितावसुम्।
उद्रीव वज्रिन्नवतो न सिञ्चते क्षरन्तीन्द्र धीतयः ॥६॥

हे वज्रधारी र नष्ट नहुने अनेकौं ऐश्वर्यले सम्पन्न इन्द्रदेव ! मानिसले पराक्रमी व्यक्तिको आश्रय लिएझैं हामी विनयपूर्वक तिम्रा नजिक आउँछौं। कुवाका पानीले खेत सेचन गरेझैं हाम्रा हातका औंलाले तिम्रा लागि सोमरस निचोर्दछन्।

यद्ध नूनं यद्वा यज्ञे यद्वा पृथिव्यामधि।
अतो नो यज्ञमाशुभिर्महेमत उग्र उग्रेभिरा गहि ॥७॥

श्रेष्ठ बुद्धिले सम्पन्न हे वीर इन्द्रदेव ! तिमी यज्ञमण्डपमा विद्यमान होऊ। धर्तीमा होस् या अन्य

कुनै स्थानमा तिमी जुन ठाउँमा भए पनि हाम्रा यज्ञस्थलमा आफ्ना बलशाली र द्रुतगामी अश्वद्वारा अवश्य आऊ।

**अजिरासो हरयो ये त आशवो वाताइव प्रसक्षिणः।**
**येभिरपत्यं मनुषः परीयसे येभिर्विश्वं स्वर्दृशे ॥८॥**

हे इन्द्रदेव ! तिम्रा द्रुतगामी र वायुजस्तो वेग भएका अश्वले शत्रुमाथि विजय प्राप्त गर्छन्। तिमी तिनैद्वारा मानिसको यज्ञ र सम्पूर्ण संसार हेर्नका लागि आऊ।

**एतावतस्त ईमह इन्द्र सुम्नस्य गोमतः।**
**यथा प्रावो मघवन् मेध्यातिथिं यथा नीपातिथिं धने ॥९॥**

हे इन्द्रदेव ! तिमीले मेध्यातिथि ऋषि र नीपातिथिलाई अपार धन दिएर रक्षा गरेझैं गाई र अश्वले सम्पन्न वैभव प्रदान गर भनेर हामी माग्दछौं।

**यथा कण्वे मघवन्त्रसदस्यवि यथा पक्थे दशव्रजे।**
**यथा गोशर्ये असनोर्ऋजिश्वनीन्द्र गोमद्धिरण्यवत् ॥१०॥**

हे धनवान् इन्द्रदेव ! तिमीले कण्व, दशव्रज, त्रसदस्यु, पक्थ र ऋजिश्वीलाई गाई र स्वर्णले सम्पन्न गरेझैं हामीलाई पनि वैभव प्रदान गर।

## [सूक्त - ५०]

**ऋषि - पुष्टिगु काण्व। देवता - इन्द्र। छन्द - प्रगाथ।**

**प्र सु श्रुतं सुराधसमर्चा शक्रमभिष्टये।**
**यः सुन्वते स्तुवते काम्यं वसु सहस्रेणेव मंहते ॥१॥**

हे स्तोता हो ! तिमीहरू वाञ्छित सम्पत्ति प्राप्त गर्नका लागि सोमयज्ञ गर्ने स्तोतालाई सहस्र किसिमका इच्छित ऐश्वर्य प्रदान गर्ने, बलशाली, ऐश्वर्यशाली र यशस्वी इन्द्रलाई विधिपूर्वक प्रार्थना गर।

**शतानीका हेतयो अस्य दुष्टरा इन्द्रस्य समिषो महीः।**
**गिरिर्न भुज्मा मघवत्सु पिन्वते यदीं सुता अमन्दिषुः ॥२॥**

सुसंस्कृत सोमरसले इन्द्रदेवलाई आनन्दित गरेपछि उनी सम्पत्तिवान्लाई पर्वतले जस्तै विशाल पदार्थको भण्डार प्रदान गरेर सन्तुष्ट पार्दछन्। उनीसित अडिग रहने र राम्ररी हुइँक्याइने खालका अनेकौं शस्त्रास्त्र छन्।

**यदीं सुतास इन्दवोऽभि प्रियममन्दिषुः।**
**आपो न धायि सवनं म आ वसो दुघा इवोप दाशुषे ॥३॥**

सबैलाई निवास प्रदान गर्ने हे इन्द्रदेव ! पेलिएको सोमरसले तिमीलाई आनन्दित गरेका बेला आहुति प्रदान गर्दै यज्ञकर्म गर्नेलाई तिमीले दुध दिने गाई र जलजस्तै बनाइदियौ।

**अनेहसं वो हवमानमूतये मध्वः क्षरन्ति धीतयः।**
**आ त्वा वसो हवमानास इन्दव उप स्तोत्रेषु दधिरे ॥४॥**

हे याजक हो ! सुरक्षा प्राप्त गर्नका लागि तिमीहरू उनै इन्द्रदेवलाई सोमरस पेल। उनी अत्यन्त प्रशंसनीय र शत्रुद्वारा अपराजेय छन्। सबैलाई निवास प्रदान गर्ने हे इन्द्रदेव ! यज्ञ मण्डपमा प्रशंसनीय सोमरस तिम्रा सामु प्रस्तुत गरिन्छ।

**आ नः सोमे स्वध्वर इयानो अत्यो न तोशते।**
**यं ते स्वदावन्त्स्वदन्ति गूर्तयः पौरे छन्दयसे हवम् ॥५॥**

हे इन्द्रदेव ! तिमी हाम्रा स्तुतिको अभिलाषा गर्दछौ। त्यसले तिमीलाई हर्षित गराउँछ। अश्वजस्तै वेगपूर्वक गमन गर्दै तिमी हाम्रा सोमयज्ञमा आऊ र शत्रु विनाश गर।

**प्र वीरमुग्रं विविचिं धनस्पृतं विभूतिं राधसो महः।**
**उद्रीव वज्रिन्नवतो वसुत्वना सदा पीपेथ दाशुषे ॥६॥**

हे वज्रधारी इन्द्रदेव ! तिमी अत्यन्त पराक्रमी र अनेकौं किसिमका ऐश्वर्यले सम्पन्न छौ। हामी प्रचुर ऐश्वर्य तिमीसित याचना गर्दछौं। तिमी पानी भरिएको जलकुण्डले जस्तै, हामी हवि प्रदान गर्नेलाई सन्तुष्ट गराउँछौ।

यद्ध नूनं परावति यद्वा पृथिव्यां दिवि।
युजान इन्द्र हरिभिर्महेमत ऋष्व ऋष्वेभिरा गहि॥७॥

महान् बुद्धिले सम्पन्न हे इन्द्रदेव ! तिमी द्युलोकमा विद्यमान छौ। भूलोक वा अन्यत्र कुनै अर्को प्रदेशमै भए पनि शक्तिशाली अश्व नियोजित गरेर हाम्रा सामु चाँडै आऊ।

रथिरासो हरयो ये ते अस्रिध ओजो वातस्य पिप्रति।
येभिर्नि दस्युं मनुषो निघोषयो येभिः स्वः परीयसे॥८॥

हे इन्द्रदेव ! तिम्रा रथमा नियोजित अश्व बाधारहित छन्। तिनले शत्रुलाई सताउँदै स्वर्गलोकमा चारैतिर गमन गर्दछौ। तिम्रा अश्वले वायुमा रहेको तेज आत्मसात् गर्छन्।

एतावतस्ते वसो विद्याम शूर नव्यसः।
यथा प्राव एतशं कृत्व्ये धने यथा वशं दशव्रजे॥९॥

सबैलाई निवास प्रदान गर्ने हे शूरवीर इन्द्रदेव ! तिमीले ऐश्वर्यका लागि एतश र दशव्रज ऋषिलाई संरक्षित गर्ने तिमी ऐश्वर्यवान् र प्रार्थनीय छौ। तिमीलाई हामी राम्ररी जान्दछौं।

यथा कण्वे मघवन् मेधे अध्वरे दीर्घनीथे दमूनसि।
यथा गोशर्ये असिषासो अद्रिवो मयि गोत्रं हरिश्रियम्॥१०॥

हे वज्रधारी इन्द्रदेव ! तिमीले कण्व, दीर्घनीथ, गोशर्य ऋषिलाई रक्षा गरेझैं अश्वमा आएर हामीलाई पनि सुरक्षा प्रदान गर।

[सूक्त – ५१]

**ऋषि** – श्रुष्टिगु काण्व। **देवता** – इन्द्र। **छन्द** – प्रगाथ।

यथा मनौ सांवरणौ सोममिन्द्रपिबः सुतम्।
नीपातिथौ मघवन् मेध्यातिथौ पुष्टिगौ श्रुष्टिगौ सचा॥१॥

हे धनवान् इन्द्रदेव ! तिमीले सांवरण मनुका यज्ञमा पेलिएको सोमरस पान गरेझैं बलशाली गाईले युक्त मेधातिथि, नीपाथिथि, पुष्टिगु र श्रुष्टिगु आदि ऋषिका यज्ञमा पनि सोमपान गर।

पार्षद्वाणः प्रस्कण्वं समसादयच्छयानं जिव्रिमुद्धितम्।
सहस्राण्यसिषासद् गवामृषिस्त्वोतो दस्यवे वृकः॥२॥

हे इन्द्रदेव ! उच्च स्थानमा शयन गर्ने प्रस्कण्व ऋषिलाई पार्षद्वाणमाथि स्थापित गरेका बेला उनको सुरक्षा गरेर तिमीले हजारौं गाईको रक्षा गरेका थियौ।

य उक्थेभिर्न विन्धते चिकिद्य ऋषिचोदनः।
इन्द्रं तमच्छा वद नव्यस्य मत्यरिष्यन्तं न भोजसे॥३॥

इन्द्रदेव स्तोत्रद्वारा सबै कुरा जान्ने र ऋषिका प्रेरक हुन्, उनका लागि नौलो स्तुति गरौं। उनीबाट दिव्य पोषणको कामना गरौं।

यस्मा अर्कं सप्तशीर्षाणमानृचुस्त्रिधातुमुत्तमे पदे।
स त्विमा विश्वा भुवनानि चिक्रददादिज्जनिष्ट पौंस्यम्॥४॥

इन्द्रदेवले समस्त लोक सिर्जना गरेर आफ्नो शक्ति प्रकट गरे, उनका लागि स्तोताले सात शीर्ष र तीन धारक क्षमताले युक्त स्तोत्र वाचन गरे।

यो नो दाता वसूनामिन्द्रं तं हूमहे वयम्।
विद्मा ह्यस्य सुमतिं नवीयसीं गमेम गोमति व्रजे॥५॥

हामी आफ्नो सहायताका लागि ऐश्वर्य प्रदाता इन्द्रदेवलाई बोलाउँछौं। हामीले जानेको उनको नौलो प्रार्थना गरेर श्रेष्ठ गाईले सम्पन्न गोठ प्राप्त गरौं।

यस्मै त्वं वसो दानाय शिक्षसि स रायस्पोषमश्नुते।
तं त्वा वयं मघवन्निद्रा गिर्वणः सुतावन्तो हवामहे॥६॥

सबैलाई आवास प्रदान गर्ने हे इन्द्रदेव ! जसलाई तिमी दान दिने उपदेश दिन्छौ, त्यो व्यक्ति ऐश्वर्यले पोषित हुन्छ। हे प्रार्थनीय तथा धनवान् इन्द्रदेव ! हामी याजकहरू आफ्नो सहायताका लागि तिमीलाई आह्वान गर्दछौं।

कदा चन स्तरीरसि नेन्द्र सश्चसि दाशुषे।
उपोपेन्नु मघवन् भूय इन्नु ते दानं देवस्य पृच्यते ॥७॥

हे इन्द्रदेव ! तिमी कहिल्यै सृष्टि विखण्डित गर्दैनौ। तिमी याजकका सहयोगी देवता हौ। तिम्रो दान बारम्बार आउँछ, त्यो आशाभन्दा बढी नै प्राप्त भएको हुन्छ।

प्र यो ननक्षे अभ्योजसा क्रिविं वधैः शुष्णं निघोषयन्।
यदेदस्तम्भीत्प्रथयन्नमूं दिवमादिज्जनिष्ट पार्थिवः ॥८॥

इन्द्रदेवले आफ्ना सामर्थ्यद्वारा स्वर्गलोक रोकेर राखेको शुष्ण नामका असुरलाई आफ्नै आयुधले वध गरे, उनैले धर्तीका समस्त पदार्थ उत्पन्न गरेका हुन्।

यस्यायं विश्व आर्यो दासः शेवधिपा अरिः।
तिरश्चिदर्ये रुशमे पविरवि तुभ्येत् सो अज्यते रयिः ॥९॥

आर्य र दास इन्द्रदेवका धनको रक्षक हुन्। उनी रुशमका लागि पवीरझैं अनुकूल हुन्छन्। इन्द्रदेव तिमीहरूका लागि गुप्त धन प्रदायक हुन्छन्।

तुरण्यवो मधुमन्तं घृतश्चुतं विप्रासो अर्कमानृचुः।
अस्मे रयिः पप्रथे वृष्ण्यं शवोऽस्मे सुवानास इन्दवः ॥१०॥

चाँडो कार्य गर्ने विप्रहरू मधुर घिउले सेचन गर्दै पूजनीय मन्त्र उच्चारण गर्दछन्। यसबाट हाम्रा लागि धन, पुरुषार्थ र सोमको सिद्धि हुन्छ।

[सूक्त - ५२]

ऋषि - आयु काण्व। देवता - इन्द्र। छन्द - प्रगाथ।

यथा मनौ विवस्वति सोमं शक्रापिबः सुतम्।
यथा त्रिते छन्द इन्द्र जुजोषस्यायौ मादयसे सचा ॥१॥

सामर्थ्यले सम्पन्न हे इन्द्रदेव ! विवस्वान् मनुले पेलेर प्रदान गरेको सोमरस तिमीले पान गरेझैं र त्रित ऋषिको छन्द सुनेझैं म आयु ऋषिसँग आसीन भएर हर्षित होऊ।

पृषध्रे मेध्ये मातरिश्वनीन्द्र सुवाने अमन्दथाः।
यथा सोमं दशशिप्रे दशोण्ये स्यूमरश्मावृजूनसि ॥२॥

हे इन्द्रदेव ! सोम पेल्ने मेध्य, दशशिप्र, पृषध्र र मातरिश्वाले प्रदान गरेको सोमरस पान गरेर खुसी भएझैं स्यूमरश्मि, ऋजूनस र दशोण्य ऋषिका यज्ञमा सोमरस पान गरेर तिमी हर्षित होऊ।

य उक्था केवला दधे यः सोमं धृषितापिबत्।
यस्मै विष्णुस्त्रीणि पदा विचक्रम उप मित्रस्य धर्मभिः ॥३॥

शत्रुसंहार गर्ने इन्द्रदेव केवल स्तोत्र ग्रहण गर्दछन् र सोमरस पान गर्दछन्। उनैका लागि विष्णुदेव मित्रले झैं कर्तव्य पूरा गर्दै तीन पाउले सबै कुरो ओगट्दछन्। उनै इन्द्रदेवले हामीलाई सुख प्रदान गरुन्।

यस्य त्वमिन्द्र स्तोमेषु चाकनो वाजे वाजिञ्छतक्रतो।
तं त्वा वयं सुदुघामिव गोदुहो जुहूमसि श्रवस्यवः ॥४॥

शक्तिशाली र सयौं असल काम गर्ने हे इन्द्रदेव ! तिमी यज्ञमा स्तोताले गरेका स्तुतिले सन्तुष्ट हुन्छौ। अन्नको कामना गर्ने हामी याजकहरू तिमीलाई आहुति समर्पित गर्दै उसै किसिमले सन्तुष्ट गर्दछौं, जसरी गोठालाले गाईलाई दाना दिएर गराउँछ।

यो नो दाता स नः पिता महाँ उग्र ईशानकृत्।
अयामन्नुग्रो मघवा पुरूवसुर्गोरश्वस्य प्र दातु नः ॥५॥

पराक्रमी र शासन गर्ने महान् इन्द्रदेव हाम्रा पिताजस्तै हुन्। उनले हामीलाई ऐश्वर्य प्रदान गर्दछन्। यिनी रणक्षेत्रबाट पछि नहट्ने अत्यन्त विकराल योद्धा हुन्। अनेकौंलाई निवास प्रदान गर्ने इन्द्रदेवले हामीलाई गाई र अश्व प्रदान गरुन्।

यस्मै त्वं वसो दानाय मंहसे स रायस्पोषमिन्वति।
वसूयवो वसुपतिं शतक्रतुं स्तोमैरिन्द्रं हवामहे ॥६॥

सबैलाई आश्रय प्रदान गर्ने सयौं असल काम गरेका हे इन्द्रदेव ! तिमी जुन व्यक्तिलाई दान दिने विचार गर्दछौ, त्यो व्यक्ति नै ऐश्वर्यले सम्पन्न भएर तिम्रो संरक्षण प्राप्त गर्दछ। ऐश्वर्यको कामना गर्नेहरू स्तोत्रले तिमीलाई आह्वान गर्दछन्।

कदा चन प्र युच्छस्युभे नि पासि जन्मनी।
तुरीयादित्य हवनं त इन्द्रियमा तस्थावमृतं दिवि॥७॥

हे इन्द्रदेव ! तिमी दुई किसिमले जन्म लिन्छौ। तिमी कहिल्यै मात्तिंदैनौ। हे आदित्य ! तिमी संसारका पालक हौ। शरीरका इन्द्रिय तिम्रा प्रतीक हुन् र अमरगणले द्युलोकमा तिम्रो आह्वान गर्दछन्।

यस्मै त्वं मघवन्निन्द्र गिर्वणः शिक्षो शिक्षसि दाशुषे।
अस्माकं गिर उत सुष्टुतिं वसो कण्ववच्छृणुधी हवम्॥८॥

धनवान्, प्रार्थनीय र आश्रयदाता हे इन्द्रदेव ! दानीलाई प्रदान गर्ने ऐश्वर्य प्राप्तिका लागि हामी तिम्रो स्तुति गर्दछौं। तिमीले कण्व ऋषिको स्तुति सुनेझैं हाम्रो प्रार्थना सुन।

अस्तावि मन्म पूर्व्यं ब्रह्मेन्द्राय वोचत।
पूर्वीर्ऋतस्य बृहतीरनूषत स्तोतुर्मेधा असृक्षत॥९॥

हे ऋत्विक्हरू हो ! तिमीहरू इन्द्रदेवका लागि सनातन र कण्ठस्थ स्तोत्र पाठ गर। पहिलेका यज्ञमा बृहती छन्दमा सामगान गाइका थियौं। त्यसले स्तोताको बुद्धि बढ्छ।

समिन्द्रो रायो बृहतीरधूनुत सं क्षोणी समु सूर्यम्।
सं शुक्रासः शुचयः सं गवाशिरः सोमा इन्द्रममन्दिषुः॥१०॥

इन्द्रदेवले द्युलोक, पृथ्वीलोक, सूर्य र प्रचुर सम्पत्तिको सिर्जना गरे। उनी गाईको दुध मिसेको तेजस्वी र शुद्ध सोमरसले हर्षित भए।

[सूक्त - ५३]

ऋषि - मेध्य काण्व। देवता - इन्द्र। छन्द - प्रगाथ।

उपमं त्वा मघोनां ज्येष्ठं च वृषभाणाम्।
पूर्भित्तमं मघवन्निन्द्र गोविदमीशानं राय ईमहे॥१॥

हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमी सम्पत्तिवान् र बलवानहरूमा सर्वश्रेष्ठ छौ र शत्रुको पुरी नष्ट गर्दछौ। तिमी सबैलाई गाई प्रदान गर्ने शासक हुनाले तिमीसित ऐश्वर्य माग्दछौं।

य आयुं कुत्समतिथिग्वमर्दयो वावृधानो दिवेदिवे।
तं त्वा वयं हर्यश्वं शतक्रतुं वाजयन्तो हवामहे॥२॥

शतकर्मा, हरि नामका अश्व भएका इन्द्रदेवले आयु, अतिथिग्व र कुत्सलाई नित्य सामर्थ्य प्रदान गरेर महान् बनाए। आफ्नो सहायताका लागि हामी उनैको आह्वान गर्दछौं र उनीबाट बलको कामना गर्दछौं।

आ नो विश्वेषां रसं मध्वः सिञ्चन्त्वद्रयः।
ये परावति सुन्विरे जनेष्वा ये अर्वावतीन्दवः॥३॥

टाढा या नजिक जुन ठाउँमा सोम छ, त्यो हामी सबैले ढुङ्गामा पेलेर निकालौं।

विश्वा द्वेषांसि जहि चाव चा कृधि विश्वे सन्वन्त्वा वसु।
शीष्टेषु चित्ते मदिरासो अंशवो यत्रा सोमस्य तृम्पसि॥४॥

हे इन्द्रदेव ! जुन याजकको सोमरस पान गरेर तिमी सन्तुष्ट हुन्छौ, त्यसका सबै शत्रु परास्त गर्दै सुरक्षा गर। समस्त मानवले उसलाई ऐश्वर्य प्रदान गरुन्। उसले तयार पारेको सोमरस तिम्रा लागि हितकारी होस्।

इन्द्र नेदीय एदिहि मितमेधाभिरूतिभिः।
आ शन्तम शन्तमाभिरभिष्टिभिरा स्वापे स्वापिभिः॥५॥

हे इन्द्रदेव ! शान्तिप्रदायक, सुखदायी कामनाका साथ श्रेष्ठ बन्धुसहित तिमी हाम्रा निकट आऊ। तिमी मेधावी र संरक्षणको कामना गर्नेहरूसँग आऊ।

आजितुरं सत्पतिं विश्वचर्षणिं कृधि प्रजास्वाभगम्।
प्र सू तिरा शचीभिर्ये त उक्थिनः क्रतुं पुनत आनुषक्॥६॥

समस्त मानिसका हितैषि र सत्पात्रका पालनकर्ता हे इन्द्रदेव ! तिमी प्रजाहरूमा व्याप्त भएको युद्ध जित्दछौ। तिमी आफ्ना स्तोतालाई धन प्रदान गरेर आफ्ना सामर्थ्यले उनीहरूलाई समृद्ध गराऊ र यज्ञ आदि कार्य सम्पन्न गराऊ।

**यस्ते साधिष्ठोऽवसे ते स्याम भरेषु ते।**
**वयं होत्राभिरुत देवहूतिभिः ससवांसो मनामहे ॥७॥**

हे इन्द्रदेव ! आफ्नो सुरक्षाका लागि तिमीलाई आह्वान गर्दछौँ। रणक्षेत्रमा हामी तिम्रा आश्रित भएर रहौँ। स्तुतिले अन्नको कामना गर्ने हामी याजक तिम्रो उपासना गर्दछौँ।

**अहं हि ते हरिवो ब्रह्म वाजयुराजिं यामि सदोतिभिः।**
**त्वामिदेव तममे समश्वयुर्गव्युरग्रे मथीनाम् ॥८॥**

अश्वले सम्पन्न हे इन्द्रदेव ! गाई, अश्व र अन्नको कामना गर्ने हामी याजक तिमीबाट संरक्षित भएर भयङ्कर सङ्ग्राममा जान्छौँ। हामी डराएपछि पराक्रमीहरूमा सर्वश्रेष्ठ तिम्रै शरणमा आउँछौं।

[सूक्त – ५४]

**ऋषि** – मातरिश्वा काण्व। **देवता** – इन्द्र विश्वेदेवा। **छन्द** – प्रगाथ।

**एतत्त इन्द्र वीर्यं गीर्भिर्गृणन्ति कारवः।**
**ते स्तोभन्त ऊर्जमावन् घृतश्चुतं पौरासो नक्षन्धीतिभिः ॥१॥**

हे इन्द्रदेव ! ऋत्विक्‌हरू तिम्रा सामर्थ्यको वर्णन गर्दछन्। उनीहरूका प्रार्थनाले अन्न र घिउ प्रदान गर्ने गाई प्राप्त गरुन्।

**नक्षन्त इन्द्रमवसे सुकृत्यया येषां सुतेषु मन्दसे।**
**यथा संवर्ते अमदो यथा कृश एवास्मे इन्द्र मत्स्व ॥२॥**

हे इन्द्रदेव ! जसको सोमयागमा तिमी हर्षित हुन्छौ, ती याजक आफ्नो सुरक्षाका लागि सत्कर्म गर्दै तिमीलाई वरण गर्दछन्। तिमी संवर्त र कृश ऋषिका यज्ञमा खुसी भएझैं हाम्रा यज्ञमा पनि आनन्दित होऊ।

**आ नो विश्वे सजोषसो देवासो गन्तनोप नः।**
**वसवो रुद्रा अवसे न आ गमञ्छृण्वन्तु मरुतो हवम् ॥३॥**

मित्रभावले रहने समस्त देवताहरू हाम्रा निकट आऊन्। संरक्षणका लागि वसु तथा रुद्रदेव हाम्रा नजिक आऊन् र मरुत्‌हरूले हाम्रो स्तुति सुनून्।

**पूषा विष्णुर्हवनं मे सरस्वत्यवन्तु सप्त सिन्धवः।**
**आपो वातः पर्वतासो वनस्पतिः शृणोतु पृथिवी हवम् ॥४॥**

विष्णुदेव, सरस्वती, पूषा र सप्तसरिताले हाम्रा यज्ञको संरक्षण गरुन्। वनस्पति, जल, वायु, पर्वत र धर्तीले हाम्रो स्तुति सुनून्।

**यदिन्द्र राधो अस्ति ते माघोनं मघवत्तम।**
**तेन नो बोधी सधमाद्यो वृधे भगो दानाय वृत्रहन् ॥५॥**

हे वृत्रहन्ता, ऐश्वर्यवान्, वन्दनीय इन्द्रदेव ! तिमी आफ्ना श्रेष्ठ धनसँगै उल्लसित भएर दान दिनका लागि आऊ।

**आजिपते नृपते त्वमिद्धि नो वाज आ वक्षि सुक्रतो।**
**वीती होत्राभिरुत देववीतिभिः ससवांसो वि शृण्विरे ॥६॥**

युद्धलाई नियन्त्रित गर्ने र सत्कर्म गर्ने हे इन्द्रदेव ! तिमी प्रजाको पोषण गर्दछौ र रणक्षेत्रमा हामीलाई संरक्षित गर्दछौ। देवताहरूका लागि यजन गर्ने याजक अन्न प्राप्त गर्ने इच्छाले तिम्रो प्रार्थना गर्दछन्।

**सन्ति ह्यर्य आशिष इन्द्र आयुर्जनानाम्।**
**अस्मान्नक्षस्व मघवन्नुपावसे धुक्षस्व पिप्युषीमिषम् ॥७॥**

हे धनवान् इन्द्रदेव ! मानिसको जीवन र धन तिम्रै आश्रयमा छन्। संरक्षित गर्नका लागि हामीलाई आफैँसित राख र पोषक अन्न प्रदान गर।

**वयं त इन्द्र स्तोमेभिर्विधेम त्वमस्माकं शतक्रतो।**
**महि स्थूरं शशयं राधो अह्रयं प्रस्कण्वाय नि तोशय ॥८॥**

हे शतकर्मा इन्द्रदेव ! तिमी हाम्रा हौ र हामी तिम्रै हौं। स्तोत्रले हामी तिम्रो प्रार्थना गर्दछौं। हे इन्द्रदेव ! म प्रस्कण्व ऋषिलाई तिमी महान्, निन्दारहित र कहिल्यै नघट्ने सम्पत्ति प्रदान गर।

[सूक्त – ५५]

ऋषि – कृश काण्व। देवता – प्रस्कण्व। छन्द – गायत्री अनुष्टुप्।

**भूरिदिन्द्रस्य वीर्यं१ व्यख्यमभ्यायति। राधस्ते दस्यवे वृक ॥१॥**

दुष्टविनाशक हे इन्द्रदेव ! तिम्रो श्रेष्ठ शौर्य चारैतिर आलोकित भइरहेको छ। तिम्रो ऐश्वर्य हामीलाई पनि प्राप्त होस्।

**शतं श्वेतास उक्षणो दिवि तारो न रोचन्ते। मह्ना दिवं न तस्तभुः ॥२॥**

हे इन्द्रदेव ! तिमीले दिएका सयौं श्वेत वृषभ दिव्यलोकमा ताराजस्तै सुशोभित भएका छन्। तिमीले आफ्ना सामर्थ्यमा दिव्यलोक धारण गरेका छौ।

**शतं वेणूञ्छतं शुनः शतं चर्माणि म्लातानि।**
**शतं मे बल्बजस्तुका अरुषीणां चतुःशतम् ॥३॥**

इन्द्रदेवले कृश ऋषिलाई सयौं कुकुर, बाँसुरी, नरम छाला, घाँसका मुठा र रातो रङ्गका चार सय अश्व प्रदान गरे।

**सुदेवाः स्थ काण्वायना वयोवयो विचरन्तः। अश्वासो न चङ्क्रमत ॥४॥**

हे कण्ववंशी हो ! तिमीहरू पक्षी र अश्वझैं विचरण गर्दै महान् देवत्वले सम्पन्न होओ।

**आदित्साप्तस्य चर्किरन्नानूनस्य महि श्रवः।**
**श्यावीरतिध्वसन्पथश्चक्षुषा चन सन्नशे ॥५॥**

हे स्तोताहरू हो ! तिमीहरू सातै लोकका अधिष्ठाता इन्द्रदेवलाई प्रार्थना गर। श्याम वर्णको बाटो पार गरेपछि उनलाई देख्न सक्छौ। पूर्णता प्राप्त उनको कीर्ति महान् छ।

[सूक्त – ५६]

ऋषि – पृषध काण्व। देवता – प्रस्कण्व अग्नि सूर्य। छन्द – गायत्री पंक्ति।

**प्रति ते दस्यवे वृक राधो अदर्श्यह्रयम्। द्यौर्न प्रथिना शवः ॥१॥**

शत्रुका लागि बाघजस्ता हे इन्द्रदेव ! तिम्रो पवित्र ऐश्वर्य शत्रुकै विपरीतजस्तो लाग्दछ। तिम्रो सामर्थ्य दिव्यलोकजस्तै छ।

**दश मह्यं पौतक्रतः सहस्रा दस्यवे वृकः। नित्याद्रायो। अमंहत ॥२॥**

सत्कर्म गर्ने हे इन्द्रदेव ! हाम्रा लागि तिमीले दस हजार शत्रु वध गर्‍यौ र तिनको अविनाशी धनको भण्डार हामीलाई प्रदान गर्‍यौ।

**शतं मे गर्दभानां शतमूर्णावतीनाम्। शतं दासाँ अति स्रजः ॥३॥**

हे इन्द्रदेव ! तिमीले म पृषध्रलाई सयौं भेडा, गधा र सेवक प्रदान गर्‍यौ।

**तत्रो अपि प्राणीयत पूतक्रतायै व्यक्ता। अश्वानामित्र यूथ्याम् ॥४॥**

श्रेष्ठ बुद्धिले सम्पन्न मानिसका लागि नै इन्द्रदेव अश्वको वथानजस्तो ऐश्वर्य पुर्‍याउँछन्।

**अचेत्यग्निश्चिकितुर्हव्यवाट् स सुमद्रथः।**
**अग्निः शुक्रेण शोचिषा बृहत् सूरो अरोचत दिवि सूर्यो अरोचत ॥५॥**

देवताकहाँ हव्य लैजाने रथजस्तै ज्ञानसम्पन्न अग्निदेव प्रकट भएका छन्। उनी आफ्ना उज्ज्वल आलोकले धर्तीमा सुशोभित हुँदा द्युलोकमा सूर्यदेव आलोकित हुन्छन्।

[सूक्त – ५७]

ऋषि – मेध्य काण्व। देवता – अश्विनीकुमार। छन्द – त्रिष्टुप्।

**युवं देवा क्रतुना पूर्व्येण युक्ता रथेन तविषं यजत्रा।**
**आगच्छतं नासत्या शचीभिरिदं तृतीयं सवनं पिबाथः ॥१॥**

सत्यको आचरण गर्ने सम्माननीय हे अश्विनीकुमार हो ! तिमीहरू आफ्ना सामर्थ्यपूर्ण कर्मले सम्पन्न भएर रथद्वारा यज्ञस्थलमा आओ। तेस्रो सवनमा सोमरस पान गर।

**युवां देवास्त्रय एकादशासः सत्याः सत्यस्य ददृशे पुरस्तात्।**
**अस्माकं यज्ञं सवनं जुषाणा पातं सोममश्विना दीद्यग्नी ॥२॥**

अग्निजस्तै तेजले सम्पन्न हे अश्विनीकुमार हो ! हाम्रा यज्ञका सवनमा आएर सोमरस पान गर। तिमीहरूसँग सत्यको पालना गर्ने तेत्तीस देवताको समूह पनि होस्।

पनाय्यं तदश्विना कृतं वां वृषभो दिवो रजसः पृथिव्याः ।
सहस्रं शंसा उत ये गविष्टौ सर्वाँ इत्ताँ उप याता पिबध्यै ॥३॥

हे अश्विनीकुमार हो ! अन्तरिक्षबाट पृथ्वीमा जलको वर्षा गर्ने तिमीहरूको कार्य अत्यन्त प्रशंसनीय छ। गाई खोज्नेजस्ता हजारौँ पुण्यकार्य गर्दा सोमरस पान गर्न यहाँ आओ।

अयं वां भागो निहितो यजत्रेमा गिरो नासत्योप यातम् ।
पिबतं सोमं मधुमन्तमस्मे प्र दाश्वांसमवतं शचीभिः ॥४॥

पूजा गर्न योग्य हे अश्विनीकुमार हो ! स्तुति सुन्नका लागि तिमीहरू दुवै हाम्रा नजिक आओ। तिमीहरूका लागि सोमको भाग राखेका छौँ। हविप्रदातालाई आफ्ना सामर्थ्यले संरक्षित गर। हाम्रो हितका लागि मधुर सोमरस पान गर।

[सूक्त – ५८]

ऋषि – मेध्य काण्व। देवता – विश्वेदेवा ऋत्विक्। छन्द – त्रिष्टुप्।

यमृत्विजो बहुधा कल्पयन्तः सचेतसो यज्ञमिमं वहन्ति ।
यो अनूचानो ब्राह्मणो युक्त आसीत्का स्वित्तत्र यजमानस्य संवित् ॥१॥

विद्वान् याजकले विभिन्न किसिमले यज्ञकर्म गरेर देवत्व प्राप्त गरे। त्यस्ता यज्ञमा ज्ञानी ब्राह्मण नियुक्त गरिएका थिए, यस सम्बन्धमा उनको ज्ञान कस्तो थियो ?

एक एवाग्निर्बहुधा समिद्ध एकः सूर्यो विश्वमनु प्रभूतः ।
एकैवोषाः सर्वमिदं वि भात्येकं वा इदं वि बभूव सर्वम् ॥२॥

एउटै अग्निदेव विभिन्न रूपमा प्रज्वलित हुन्छन्। एकै सूर्यदेव समस्त पदार्थमा समाहित भएर अनेकौँ रूपमा प्रतिभासित हुन्छन् र देवी उषा एक्लै नै सम्पूर्ण जगत् आलोकित गर्दछिन्। यी सबै मिलेका वास्तवमा एउटै हुन्।

ज्योतिष्मन्तं केतुमन्तं त्रिचक्रं सुखं रथं सुषदं भूरिवारम् ।
चित्रामघा यस्य योगेऽधिजज्ञे तं वां हुवे अतिरिक्तं पिबध्यै ॥३॥

जाज्वल्यमान, सर्वज्ञ, सुखदाता अग्निदेवलाई हामी आह्वान गर्दछौँ। तीनै लोकमा गमन गर्ने उनीका सान्निध्यले हामीलाई धनऐश्वर्य प्राप्त हुन्छ।

[सूक्त – ५९]

ऋषि – सुपर्ण काण्व। देवता – इन्द्रावरुण। छन्द – जगती।

इमानि वां भागधेयानि सिस्रत इन्द्रावरुणा प्र महे सुतेषु वाम् ।
यज्ञेयज्ञे ह सवना भुरण्यथो यत्सुन्वते यजमानाय शिक्षथः ॥१॥

हे इन्द्रदेव र वरुणदेव ! सोमअभिषव गर्ने याजकलाई तिमीहरू धन प्रदान गर्दछौ। सबै यज्ञका प्रत्येक सवनमा सोमभाग ग्रहण गर्न तिमीहरू आउँछौ। सोमरस पेलिसकेपछि तिमीहरूलाई हामी आह्वान गर्दछौँ।

निष्षिध्वरीरोषधीराप आस्तामिन्द्रावरुणा महिमानमाशत ।
या सिस्रतू रजसः पारे अध्वनो ययोः शत्रुर्नकिरादेव ओहते ॥२॥

हे इन्द्र र वरुणदेव ! तिमीहरू अन्तरिक्ष पार गर्ने मार्गबाट गमन गर्दछौ। कुनै पनि देवद्रोही व्यक्तिले तिमीहरूसित शत्रुता गर्न सक्दैन। तिमीहरूका महिमाले समस्त जल औषधिका गुणले युक्त हुन्छ।

सत्यं तदिन्द्रावरुणा कृशस्य वां मध्व ऊर्मिं दुहते सप्त वाणीः ।
ताभिर्दाश्वांसमवतं शुभस्पती यो वामदब्धो अभि पाति चित्तिभिः ॥३॥

हे कल्याणका स्वामी इन्द्र र वरुणदेव ! सात छन्दका ऋचा गाएर कृश ऋषि सोम तयार पार्दछन्। मन लगाएर आफ्नो सुरक्षाका लागि तिमीहरूसित प्रार्थना गर्ने उपासक र हवि प्रदान गर्ने यजमानको रक्षा गर।

घृतप्रुषः सौम्या जीरदानवः सप्त स्वसारः सदन ऋतस्य ।
या ह वामिन्द्रावरुणा घृतश्चुतस्ताभिर्धत्तं यजमानाय शिक्षतम् ॥४॥

हे इन्द्र र वरुणदेव ! यज्ञमण्डपमा विद्यमान रहने सात दिदीबहिनीहरू, सौम्यतापूर्वक प्रवाहित हुँदै घिउका धाराले तिमीहरूलाई सेचन गर्दछन्। त्यो ग्रहण गरेर याजकलाई ऐश्वर्य प्रदान गर र उनलाई उच्च पदमा स्थापित गर।

अवोचाम महते सौभगाय सत्यं त्वषाभ्यां महिमानमिन्द्रियम्।
अस्मान्त्स्विन्द्रावरुणा घृतश्चुतस्त्रिभिः साप्तेभिरवतं शुभस्पती ॥५॥

कल्याणकारी शक्तिका स्वामी हे इन्द्रदेव र वरुणदेव ! आफूलाई सौभाग्यशाली बनाउनका लागि हामी तिमीहरूको वास्तविक महानताको गुणगान गर्दछौं। घिउका धाराले सिञ्चित गर्ने हामी याजकहरूलाई तीन गुने सात किसिमले रक्षित गर।

इन्द्रावरुणा यदृषिभ्यो मनीषां वाचो मतिं श्रुतमदत्तमग्रे।
यानि स्थानान्यसृजन्त धीरा यज्ञं तन्वानास्तपसाभ्यपश्यम् ॥६॥

हे इन्द्र र वरुणदेव ! उहिलेका ऋषिलाई तिमीहरूले दिएका ज्ञान, वाणी, विवेक र विचारका सहायताले उनीहरूले यज्ञमण्डपको निर्माण गरेका थिए। त्यसलाई हामी आफ्नो तपस्याले जानौं र प्राप्त गरौं।

इन्द्रावरुणा सौमनसमदृप्तं रायस्पोषं यजमानेषु धत्तम्।
प्रजां पुष्टिं भूतिमस्मासु धत्तं दीर्घायुत्वाय प्र तिरतं न आयुः ॥७॥

हे इन्द्र र वरुणदेव ! यजन गर्ने यजमानहरूलाई सौम्यता, निरहङ्कारिता र पोषण दिने किसिमको धन प्रदान गर। हामीलाई सन्तान, पुष्टि र सम्पत्ति प्रदान गर्दै तिमीहरू हाम्रो आयु बढाइदेओ।

[इति वालखिल्यं समाप्तम्]

[सूक्त – ६०]

ऋषि – भर्ग प्रागाथ। देवता – अग्नी। छन्द – प्रगाथ।

अग्न आ याह्यग्निभिर्होतारं त्वा वृणीमहे।
आ त्वामनक्तु प्रयता हविष्मती यजिष्ठं बर्हिरासदे ॥१॥

हे अग्निदेव ! तिमी देवतालाई बोलाउँछौ। हाम्रो प्रार्थना सुनेर आफ्ना अग्निहरूसँगै यहाँ आऊ। हे पूज्य अग्निदेव ! अध्वर्युले प्रदान गरेका आसनमा बस, तिम्रो पूजा गर्दछौं।

अच्छा हि त्वा सहसः सूनो अङ्गिरः स्रुचश्चरन्त्यध्वरे।
ऊर्जो नपातं घृतकेशमीमहेऽग्निं यज्ञेषु पूर्व्यम् ॥२॥

बलद्वारा उत्पन्न, सर्वत्र गमनशील हे अग्निदेव ! तिमीसम्म हविष्यान्न पुऱ्याउनका लागि यो पवित्र हविपात्र सक्रिय छ। शक्ति ह्रास हुनबाट रोक्ने, अभीष्ट प्रदान गर्ने, तेजस्वी ज्वालाले युक्त तिमीलाई हामी यज्ञस्थलमा प्रार्थना गर्दछौं।

अग्ने कविर्वेधा असि होता पावक यक्ष्यः।
मन्द्रो यजिष्ठो अध्वरेष्वीड्यो विप्रेभिः शुक्र मन्मभिः ॥३॥

हे अग्निदेव ! अत्यन्त पूज्य, विद्वान्, हर्ष प्रदान गर्ने र सबैलाई शुद्ध गराउने तिमी हौ। सबैभन्दा महान् होताका रूपमा तिमीलाई ज्ञानीहरूले असल स्तोत्रले प्रशंसा गर्छन्।

अद्रोघमा वहोशतो यविष्ठ्य देवाँ अजस्र वीतये।
अभि प्रयांसि सुधिता वसो गहि मन्दस्व धीतिभिर्हितः ॥४॥

शक्तिशाली, सबैलाई निवास प्रदान गर्ने हे अग्निदेव ! तिमी हाम्रो हवि सेवन गर्नका लागि विद्रोहरहित र अभिलाषाले युक्त देवतालाई यज्ञस्थलमा लिएर आऊ। हामीबाट भावनापूर्वक प्रदान गरिएको हविष्यान्न तिमी ग्रहण गर। हाम्रा प्रार्थनाले प्रशंसित भएर आनन्दित होऊ।

त्वमित्सप्रथा अस्यग्ने त्रातर्ऋतस्कविः।
त्वां विप्रासः समिधान दिदिव आ विवासन्ति वेधसः ॥५॥

हे सर्वरक्षक र गुणधर्ममा सुप्रसिद्ध अग्निदेव ! तिमी सत्यको रूप र ज्ञानी हौ। तेजको प्रतीक अग्नि प्रज्वलित हुँदा ज्ञानी तथा श्रेष्ठ याज्ञिकले तिम्रो स्तुति गर्दछन् र सेवाका लागि तयार हुन्छन्।

शोचा शोचिष्ठ दीदिहि विशे मयो रास्व स्तोत्रे महाँ असि।
देवानां शर्मन् मम सन्तु सूरयः शत्रूषाहः स्वग्नयः ॥६॥

अत्यन्त तेजस्वी हे अग्निदेव ! देवताहरूमा तिमी सर्वश्रेष्ठ छौ। उचित रूपले प्रज्वलित भएर प्रार्थना गर्ने मानिसलाई सुख प्रदान गर। तिमी शत्रुलाई पराजित गर्ने बन।

यथा चिद्वृद्धमतसमग्ने सञ्जूर्वसि क्षमि।
एवा दह मित्रमहो यो अस्मध्रुग् दुर्मन्मा कश्च वेनति ॥७॥

मित्रहरूमा महान् हे अग्निदेव ! सुकेका काठ भस्म गराएझैं तिमी हाम्रा पतनको कामना गर्ने विद्रोही तथा दुर्बुद्धिग्रस्त मानिसलाई पनि जलाएर भस्म गरिदेऊ।

मा नो मर्ताय रिपवे रक्षस्विने माघशंसाय रीरधः।
अस्रेधद्भिस्तरणिभिर्यविष्ठ्य शिवेभिः पाहि पायुभिः ॥८॥

हे अति बलशाली अग्निदेव ! हामीलाई शत्रु, पापी र दुष्कर्मको उपदेश दिने मानिसको आश्रित बनाएर दुःख नदेऊ, हिंसारहित र विपद्मा जोगाउने रक्षणसाधनले सुरक्षा गर।

पाहि नो अग्न एकया पाह्युत द्वितीयया।
पाहि गीर्भिस्तिसृभिरूर्जाम्पते पाहि चतसृभिर्वसो ॥९॥

सबैलाई स्थापित गर्ने हे अग्निदेव ! पहिलो स्तुतिले रक्षा गर, दोस्रो स्तुतिले अभय प्रदान गर र तेस्रो स्तुतिले संरक्षण प्रदान गर। हे ऊर्जाका स्वामी ! तिमी चौथो स्तुतिले हामी सबैको पालन गर।

पाहि विश्वस्माद्रक्षसो अराव्णः प्र स्म वाजेषु नोऽव।
त्वामिद्धि नेदिष्ठं देवतातय आपिं नक्षामहे वृधे ॥१०॥

हे अग्निदेव ! रणक्षेत्रमा समस्त असुर र दान नगर्ने शत्रुबाट हाम्रो सुरक्षा गर। यजन गरेर सम्पत्ति प्राप्त गर्नका लागि तिमीलाई निकटतम सखा मान्दछौं।

आ नो अग्ने वयोवृधं रयिं पावक शंस्यम्।
रास्वा च न उपमाते पुरुस्पृहं सुनीती स्वयशस्तरम् ॥११॥

पवित्र गराउने हे अग्निदेव ! तिमी धनको वृद्धि गर्दछौ। हामीलाई प्रशंसनीय धन प्रदान गर, त्यो धन उत्तम नीतिका मार्गबाट प्राप्त होस्। त्यो नै हाम्रो यशोदायी हुनेछ।

येन वंसाम पृतनासु शर्धतस्तरन्तो अर्य आदिशः।
स त्वं नो वर्ध प्रयसा शचीवसो जिन्वा धियो वसुविदः ॥१२॥

हे बलशाली अग्निदेव ! हामीलाई बल र अन्नले समृद्ध गराएर सद्बुद्धि प्रदान गर। रणक्षेत्रमा पराक्रम प्रदर्शित गर्दै हतियार प्रहार गरेर शत्रु जित्दै तिनको विनाश गरौं।

शिशानो वृषभो यथाग्निः शृङ्गे दविध्वत्।
तिग्मा अस्य हनवो न प्रतिधृषे सुजम्भः सहसो यहुः ॥१३॥

साँढेले सिङ तिखार्न टाउको घुमाएझैं अग्निदेव आफ्नो लप्का घुमाउँछन्। यिनको तिखो हतियार रोक्न कसैले सक्दैन। उनी शक्तिका पुत्र र श्रेष्ठ दाँत भएका छन्।

नहि ते अग्ने वृषभ प्रतिधृषे जम्भासो यद्वितिष्ठसे।
स त्वं नो होतः सुहुतं हविष्कृधि वंस्वा नो वार्या पुरु ॥१४॥

वर्षा गराउने हे अग्निदेव ! तिमी यज्ञ सम्पादन गराउँछौ। तिम्रो लप्का कसैले पनि रोक्न सक्दैन, किनभने तिमी आफ्नो ज्वाला विभिन्न किसिमले बढाउँछौ। तिमी हाम्रो आहुति स्वीकार गरेर वरणीय ऐश्वर्य प्रदान गर।

शेषे वनेषु मात्रोः सं त्वा मर्तास इन्धते।
अतन्द्रो हव्या वहसि हविष्कृत आदिद्देवेषु राजसि ॥१५॥

हे अग्निदेव ! वनमा, माताका गर्भमा र भूमिमा अदृश्यरूपले व्याप्त छौ। याज्ञिकहरू तिमीलाई ज्यादै श्रद्धापूर्वक जागृत गराउँछन्। हे अग्निदेव ! आलस्यहीन होताको हव्य देवतासम्म पुऱ्याउँछौ र स्वयं उनीहरूका माझमा सुशोभित हुन्छौ।

सप्त होतारस्तमिदीळते त्वाग्ने सुत्यजमह्रयम्।
भिनत्स्यद्रिं तपसा वि शोचिषा प्राग्ने तिष्ठ जनाँ अति ॥१६॥

हे अग्निदेव ! तिमी श्रेष्ठ दानी र प्रदीप्त छौ। सात याजकहरू तिम्रो प्रार्थना गर्दछन्। तिमी आफ्ना तपस्याको शक्तिले मेघ भत्काउँछौ। हे अग्निदेव ! हव्य धारण गरेर देवताकहाँ पुऱ्याऊ।

अग्निमग्निं वो अध्रिगुं हुवेम वृक्तबर्हिषः।
अग्निं हितप्रयसः शश्वतीष्वा होतारं चर्षणीनाम् ॥१७॥

हे याजक हो ! हामी कुशले बनाएका पवित्र आसन ओछ्याएर पृथ्वीलोकमा विद्यमान अग्निदेवलाई बोलाउँछौं। तिनले प्रजा र यजमानको कल्याण गर्न आहुति धारण गर्छन्।

केतेन शर्मन्त्सचते सुषामण्यग्ने तुभ्यं चिकित्वना।
इषण्यया नः पुरुरूपमा भर वाजं नेदिष्ठमूतये ॥१८॥

हे अग्निदेव ! सुन्दर सोमयुक्त हर्षप्रदायक यज्ञमा विद्वान् याजकहरू तिम्रो प्रार्थना गर्दछन्। तिमी अनेकौं किसिमका धन प्रदान गर्नका लागि हाम्रा नजिक आऊ।

अग्ने जरितर्विश्पतिस्तेपानो देव रक्षसः।
अप्रोषिवान्गृहपतिर्महाँ असि दिवस्पायुर्दुरोणयुः ॥१९॥

हे ज्ञानस्वरूप अग्निदेव ! तिमी प्रजाको रक्षण र पोषण गर्दै आसुरी प्रकृतिलाई दुःख दिन्छौ। हे द्युलोकका रक्षक ! घरका स्वामी भएर सधैं घरैमा वन्दनीय हुन्छौ।

मा नो रक्ष आ वेशीदाघृणीवसो मा यातुर्यातुमावताम्।
परोगव्यूत्यनिरामप क्षुधमग्ने सेध रक्षस्विनः ॥२०॥

उत्तम ऐश्वर्यले सम्पन्न हे अग्निदेव ! हामीभित्र असुर, कष्टदायक रोग र पिशाचको पीडाले प्रवेश गर्न नपाऊन्। हे अग्निदेव ! अनिकाल र असुर छेउमा आउन नदेऊ।

[सूक्त – ६१]

**ऋषि** – भर्ग प्रागाथ। **देवता** – इन्द्र। **छन्द** – प्रगाथ।

उभयं शृणवच्च न इन्द्रो अर्वागिदं वचः।
सत्राच्या मघवा सोमपीतये धिया शविष्ठ आ गमत् ॥१॥

धनवान् र बलवान् हे इन्द्रदेव ! हाम्रा दुवै किसिमका प्रार्थना नजिकै आएर सुन। सामूहिक उपासनाले प्रसन्न भएर तिमीहरू सोमपान गर्न यहाँ उपस्थित होओ।

तं हि स्वराजं वृषभं तमोजसे धिषणे निष्टतक्षतुः।
उतोपमानां प्रथमो नि षीदसि सोमकामं हि ते मनः ॥२॥

वर्षा गराउन सक्षम तेजस्वी इन्द्रदेवलाई आकाश र पृथ्वीले संस्कारित गरे। हे इन्द्रदेव ! तिमी उपमानहरूमा सर्वश्रेष्ठ छौ। सोमपानको इच्छाले यज्ञवेदीमा विराजमान हुन्छौ।

आ वृषस्व पुरूवसो सुतस्येन्द्रान्धसः।
विद्मा हि त्वा हरिवः पृत्सु सासहिमधृष्टं चिद्दधृष्वणिम् ॥३॥

महान् ऐश्वर्यसम्पन्न हे इन्द्रदेव ! सोमरूप अन्नको वर्षा गर। तिमी रणक्षेत्रमा अश्वसम्पन्न भएर शत्रु पराजित गर्दछौ। तिमी आफैं पराजित नभएर अरूको नै विनाश गर्दछौ भन्ने हामीलाई थाहा छ।

अप्रामिसत्य मघवन्तथेदसदिन्द्र क्रत्वा यथा वशः।
सनेम वाजं तव शिप्रिन्नवसा मक्षू चिद्यन्तो अद्रिवः ॥४॥

सधैं सत्यको आचरण गर्ने हे धनवान् इन्द्रदेव ! तिमी जुन किसिमको इच्छा गर्दछौ, त्यो पूरा हुने गर्दछ। हे वज्रधारी र मुकुटधारी इन्द्रदेव ! तिमीबाट संरक्षित भएर विजयी हुँदै हामी अन्न प्राप्त गरौं।

शग्ध्यू३ षु शचीपत इन्द्र विश्वाभिरूतिभिः।
भगं न हि त्वा यशसं वसुविदमनु शूर चरामसि ॥५॥

शचीका पति, शूरवीर हे इन्द्रदेव ! सबै किसिमका रक्षा साधनसँग हामीलाई अभीष्ट फल प्रदान गर। सौभाग्ययुक्त धन प्रदान गर्ने तिमीलाई हामी आराधना गर्दछौं।

पौरो अश्वस्य पुरुकृद् गवामस्युत्सो देव हिरण्ययः।
नकिर्हि दानं परिमर्धिषत्त्वे यद्यद्यामि तदा भर ॥६॥

हे इन्द्रदेव ! तिमी गाई र अश्व बढाउँछौ, स्वर्णसम्पदाका स्रोत हौ र तिम्रो अनुदान बिर्सने सामर्थ्य कसैसित छैन। त्यसैले हामीलाई अभीष्ट फलले परिपूर्ण गराऊ।

त्वं ह्येहि चेरवे विदा भगं वसुत्तये।
उद्वावृषस्व मघवन् गविष्टय उदिन्द्राश्वमिष्टये ॥७॥

हे इन्द्रदेव ! हामी उत्तम आचरणयुक्त भएर तिमीलाई आह्वान गर्दछौं। हे ऐश्वर्यवान् इन्द्रदेव ! गाई, अश्व र श्रेष्ठ धन प्राप्ति गर्ने हाम्रो कामना पूरा गराऊ।

त्वं पुरू सहस्राणि शतानि च यूथा दानाय मंहसे।
आ पुरन्दरं चकृम विप्रवचस इन्द्रं गायन्तोऽवसे ॥८॥

हे इन्द्रदेव ! हवि प्रदान गर्नेलाई सयौं वा हजारौं गाईको समूह दिन समर्थ छौ। शत्रुको सहर विध्वंस गर्नमा समर्थ तिमीलाई हामी रक्षाका लागि सामगान गर्दै बोलाउँछौं।

अविप्रो वा यदविधद् विप्रो वेन्द्र ते वचः।
स प्र ममन्दत्त्वाया शतक्रतो प्राचामन्यो अहंसन ॥९॥

जोसिलो शक्तिले सम्पन्न हे सयौं कर्म गर्ने इन्द्रदेव ! कुनै व्यक्ति, चाहे त्यो ज्ञानी होस् वा मूर्ख नै, यदि तिम्रो प्रार्थना गर्दछ भने तिम्रो कृपाबाट हर्षित हुन पाउँछ।

उग्रबाहुर्म्रक्षकृत्वा पुरन्दरो यदि मे शृणवद्धवम्।
वसूयवो वसुपतिं शतक्रतुं स्तोमैरिन्द्रं हवामहे ॥१०॥

शत्रु संहार गर्ने र विशाल भुजा भएका हे सयौं कर्म गर्ने इन्द्रदेव ! तिमी ऐश्वर्यका स्वामी र शत्रुको सहर नष्ट गराउने हौ। तिमी हाम्रो स्तुति सुन। हामी ऐश्वर्यको कामना गर्ने याजकहरू तिमीलाई आह्वान गर्दछौं।

न पापासो मनामहे नारायासो न जल्हवः।
यदिन्विन्द्रं वृषणं सचा सुते सखायं कृणवामहै ॥११॥

इन्द्रदेवलाई हामी पाप प्रवृत्तिका भनेर ठान्दैनौं। उनलाई ऐश्वर्य र यज्ञकर्मले हीन भनेर मान्दैनौं। बरु हामी ती बलशालीलाई सोमयज्ञमा आफ्ना सखा बनाउँछौं।

उग्रं युयुज्म पृतनासु सासहिमृणकातिमदाभ्यम्।
वेदा भृमं चित्सनिता रथीतमो वाजिनं यमिदू नशत् ॥१२॥

जसको स्तुति ऋणजस्तो निश्चित फल प्रदान गर्ने हुन्छ, जो अनेकौं गतिशील अश्व र रथका स्वामी हुन् एवं तिनका ज्ञाता हुन्, जो अनेकौं यजमानका बीचमा अँटाएका छन्, त्यस्ता अदम्य साहसका धनी, अजेय वीर इन्द्रदेवलाई हामी प्रतिष्ठित गर्दछौं।

यत इन्द्र भयामहे ततो नो अभयं कृधि।
मघवञ्छग्धि तव तन्न ऊतिभिर्वि द्विषो वि मृधो जहि ॥१३॥

हे इन्द्रदेव ! हामी डराएका छौं। हामीलाई भयमुक्त गराऊ। हे धनवान् इन्द्रदेव ! तिमी सर्वशक्तिमान् छौ, त्यसैले आफ्ना सामर्थ्यले हाम्रा शत्रु तथा हिंसक वृत्ति हुनेलाई नष्ट गरेर हाम्रो संरक्षण गर।

त्वं हि राधस्पते राधसो महः क्षयस्यासि विधतः।
तं त्वा वयं मघवन्निन्द्र गिर्वणः सुतावन्तो हवामहे ॥१४॥

हे ऐश्वर्यशाली इन्द्रदेव ! हामीलाई दिनका लागि तिमी असङ्ख्य धन लिने गर्दछौ। हे स्तुति गर्न योग्य धनवान् ! शुद्ध सोमरस आस्वादन गर्नका लागि हामी साधकहरू तिमीलाई बोलाउँछौं।

इन्द्रः स्पळुत वृत्रहा परस्पा नो वरेण्यः।
स नो रक्षिषच्चरमं स मध्यमं स पश्चात्पातु नः पुरः ॥१५॥

हे सर्वज्ञ इन्द्रदेव ! तिमी वृत्र संहार गर्ने र सज्जनलाई पोषण गर्ने हौ। तिमी हाम्रा वरणीय भएर हाम्रा श्रेष्ठतम र मध्यम प्रवृत्तिलाई संरक्षण प्रदान गर। हामीलाई अगाडि र पछाडिबाट सुरक्षा गर।

त्वं नः पश्चादधरादुत्तरात्पुर इन्द्र नि पाहि विश्वतः।
आरे अस्मत्कृणुहि दैव्यं भयमारे हेतीरदेवीः ॥१६॥

हे इन्द्रदेव ! हामीलाई असुर र देवताका डरबाट मुक्त गराऊ र माथितल, अगाडिपछाडि सबै तिरबाट सुरक्षा गर।

अद्याद्या श्वः श्व इन्द्र त्रास्व परे च नः।
विश्वा च नो जरितॄन्त्सत्पते अहा दिवा नक्तं च रक्षिषः ॥१७॥

हे इन्द्रदेव ! वर्तमान र भविष्यमा हामीलाई तिम्रो संरक्षण प्राप्त होस्। हे सज्जनका पालक इन्द्रदेव ! तिमी सधैं दिउँसो र राति हामी याजकका रक्षक बनिराख।

प्रभङ्गी शूरो मघवा तुवीमघः सम्मिश्लो वीर्याय कम्।
उभा ते बाहू वृषणा शतक्रतो नि या वज्रं मिमिक्षतुः ॥१८॥

हे इन्द्रदेव ! आफ्ना पराक्रमले तिमी शत्रुको सामर्थ्य नाश पार्दछौ। तिमी सबैमा व्याप्त र ऐश्वर्यवान् छौ। हे सयौं कर्म गर्ने इन्द्रदेव ! तिमी दुवै भुजामा वज्र धारण गर्छौ, ती भुजा विशिष्ट सामर्थ्यले युक्त छन्।

[सूक्त - ६२]

**ऋषि** - प्रगाथ काण्व। **देवता** - इन्द्र। **छन्द** - पंक्ति बृहती।

प्रो अस्मा उपस्तुतिं भरता यज्जुजोषति।
उक्थैरिन्द्रस्य माहिनं वयो वर्धन्ति सोमिनो भद्रा इन्द्रस्य रातयः ॥१॥

हे याजक हो ! तिमीहरू इन्द्रदेवको प्रार्थना गर र उनको सोमरूपी अन्नलाई आफ्ना स्तोत्रले समृद्ध गराओ। उनले दिएको दान हितकारी हुन्छ।

अयुजो असमो नृभिरेकः कृष्टीरयास्यः।
पूर्वीरति प्र वावृधे विश्वा जातान्योजसा भद्रा इन्द्रस्य रातयः ॥२॥

इन्द्रदेव समस्त देवताहरूमा प्रमुख, सर्वश्रेष्ठ र अनश्वर छन्। उनी आफ्ना ओजले समस्त प्राणी र पुराना मानिसलाई समृद्ध गराउँछन्। उनको ऐश्वर्य कल्याणदायक छ।

अहितेन चिदर्वता जीरदानुः सिषासति।
प्रवाच्यमिन्द्र तत्तव वीर्याणि करिष्यतो भद्रा इन्द्रस्य रातयः ॥३॥

चाँडै दान गर्ने, चाँडो कुद्ने अश्वमा हिँड्न रुचाउने हे इन्द्रदेव ! वीरता प्रदर्शन गर्ने तिम्रो प्रसिद्ध कार्य प्रशंसनीय छ। तिम्रा ऐश्वर्यले हित गर्दछ।

आ याहि कृणवाम त इन्द्र ब्रह्माणि वर्धना।
येभिः शविष्ठ चाकनो भद्रमिह श्रवस्यते भद्रा इन्द्रस्य रातयः ॥४॥

हे शक्तिशाली इन्द्रदेव ! तिम्रो जोस बढाउने स्तोत्र गाउँछौं, त्यसैले तिमी आऊ। कीर्तिको कामना गर्ने याजकको हित गर्न खोज्छौ किनभने तिम्रा ऐश्वर्यले हित गर्दछ।

धृषतश्चिद्धृषन्मनः कृणोषीन्द्र यत्त्वम्।
तीव्रैः सोमैः सपर्यतो नमोभिः प्रतिभूषतो भद्रा इन्द्रस्य रातयः ॥५॥

हे इन्द्रदेव ! परिष्कृत सोमरस समर्पित गरेर वन्दनापूर्वक तिम्रो सत्कार गर्ने यजमानलाई तिमी उच्च मनोबल प्रदान गर्दछौ। तिम्रो ऐश्वर्य हित गर्ने खालको छ।

अव चष्ट ऋचीषमोऽवताँ इव मानुषः।
जुष्ट्वी दक्षस्य सोमिनः सखायं कृणुते युजं भद्रा इन्द्रस्य रातयः ॥६॥

हे इन्द्रदेव ! तिर्खाले खरिएको मानिसले जलकुण्डतिर हेरेझैं तिमी हाम्रा स्तुतिले प्रसन्न भएर सबैलाई हेर्दछौ। सोम अभिषव गर्नेहरूसित तिमी मित्रता गर्दछौ। तिम्रा ऐश्वर्यले हित गर्दछ।

विश्वे त इन्द्र वीर्यं देवा अनु क्रतुं ददुः।
भुवो विश्वस्य गोपतिः पुरुष्टुत भद्रा इन्द्रस्य रातयः ॥७॥

हे इन्द्रदेव ! समस्त देवताले तिम्रो अनुसरण गरेर शक्ति र बुद्धि धारण गर्दछन्। हे धेरै तिरबाट प्रशंसित इन्द्रदेव ! तिमी समस्त लोक र गाईका अधिष्ठाता हौ। तिम्रा ऐश्वर्यले हित गर्दछ।

गृणे तदिन्द्र ते शव उपमं देवतातये।
यद्धंसि वृत्रमोजसा शचीपते भद्रा इन्द्रस्य रातयः ॥८॥

हे शचीपति इन्द्रदेव ! हामी चाँडै सम्पन्न हुने यज्ञमा तिम्रा सामर्थ्यको स्तुति गर्दछौं। त्यसै कारणले तिमी वृत्र वध गर्न सक्षम हुन्छौ। तिम्रा ऐश्वर्यले हित गर्दछ।

समनेव वपुष्यतः कृणवन्मानुषा युगा।
विदे तदिन्द्रश्चेतनमध श्रुतो भद्रा इन्द्रस्य रातयः ॥९॥

विचार मिल्ने पत्नीले सामर्थ्यवान् पतिलाई आफ्ना वशमा बनाएझैं समस्त जीव र संवत्सरलाई इन्द्रदेवले आफ्ना वशमा बनाउँछन्। उनी त्यस विवेकपूर्ण कार्यले गर्दा नै प्रख्यात हुन्छन्। उनका ऐश्वर्यले हित गर्दछ।

उज्जातमिन्द्र ते शव उत्त्वामुत्तव क्रतुम्।
भूरिगो भूरि वावृधुर्मघवन्तव शर्मणि भद्रा इन्द्रस्य रातयः ॥१०॥

हे धनवान् इन्द्रदेव ! अनेकौं गाईले सम्पन्न यजमान तिमीले प्रदान गरेका सुखको उपभोग गर्दछन्। उनीहरू तिम्रो सामर्थ्य र कर्म बढाउँदै समृद्धिशाली बनाउँछन्। तिम्रा ऐश्वर्यले हित गर्दछ।

अहं च त्वं च वृत्रहन्त्सं युज्याव सनिभ्य आ।
अरातीवा चिदद्रिवोऽनु नौ शूर मंसते भद्रा इन्द्रस्य रातयः ॥११॥

हे वज्रधारी इन्द्रदेव ! तिमी वृत्र वध गर्दछौ। ऐश्वर्य प्राप्त गर्नका लागि तिमीमा हामी समर्पित होऔँ। हे शूरवीर इन्द्रदेव ! दान नदिनेहरू पनि तिम्रा ऐश्वर्यको प्रशंसा गर्दछन्। तिम्रा ऐश्वर्यले हित गर्दछ।

सत्यमिद्वा उ तं वयमिन्द्रं स्तवाम नानृतम्।
महाँ असन्वतो वधो भूरि ज्योतिषि सुन्वतो भद्रा इन्द्रस्य रातयः ॥१२॥

हामी इन्द्रदेवलाई साँचो मनले प्रार्थना गर्दछौँ भन्ने सत्य हो। सोम अभिषव नगर्नेलाई उनी नष्ट गरिदिन्छन् र अभिषव गर्नेहरूका लागि उनको दान हितकारी हुन्छ।

## [सूक्त – ६२]

**ऋषि** – प्रगाथ काण्व। **देवता** – इन्द्र देवगण। **छन्द** – गायत्री अनुष्टुप् त्रिष्टुप्।

स पूर्व्यो महानां वेनःक्रतुभिरानजे। यस्य द्वारा मनुष्पिता देवेषु धिय आनजे॥

इन्द्रद्वारा देवताहरूमा पिताजस्ता मनुले बुद्धि प्राप्त गरे। तेजस्वी इन्द्र यजमानले दिने हविको कामना गर्दै यज्ञमा पुग्छन्।

दिवो मानं नोत्सदन्त्सोमपृष्ठासो अद्रयः। उक्था ब्रह्म च शंस्या ॥२॥

सोम अभिषव गर्ने प्रशंसनीय स्तोत्र र ढुङ्गाले दिव्यलोकको सिर्जना गर्ने इन्द्रदेवलाई कहिल्यै त्याग नगरौँ।

स विद्वाँ अङ्गिरोभ्य इन्द्रो गा अवृणोदप। स्तुषे तदस्य पौंस्यम् ॥३॥

ज्ञानी इन्द्रदेवले अङ्गिराका निम्ति गाई प्रदान गरे। त्यसैले हामी इन्द्रदेवका सामर्थ्यको प्रशंसा गर्दछौँ।

स प्रत्नथा कविवृध इन्द्रो वाकस्य वक्षणिः।
शिवो अर्कस्य होमन्यस्मत्रा गन्त्ववसे ॥४॥

इन्द्रदेव मेधावीहरूको वृद्धि गराउने र स्तोतालाई सुख दिने हुन्। हाम्रो सुरक्षाका लागि सोमयाग गर्ने बेलामा उनी यज्ञशालामा आऊन्।

आदू नु ते अनु क्रतुं स्वाहा वरस्य यज्यवः।
श्वात्रमर्का अनूषतेन्द्र गोत्रस्य दावने ॥५॥

हे इन्द्रदेव ! स्वाहा उच्चारणका साथ यज्ञकर्म सम्पन्न गर्ने र स्तुति गर्ने याजकहरू ऐश्वर्य प्राप्तिका निमित तिम्रा कृत्यको गुणगान गर्दछौँ।

इन्द्रे विश्वानि वीर्या कृतानि कर्त्वानि च। यमर्का अध्वरं विदुः ॥६॥

स्तुति गर्ने हामी इन्द्रदेवलाई हिंसारहित मान्दछौँ। सबै शौर्यपूर्ण कार्य इन्द्रदेवभित्रै अटाएका हुन्छन्।

यत्पाञ्चजन्यया विशेन्द्रे घोषा असृक्षत।
अस्तृणाद् बर्हणा विपो३ऽर्यो मानस्य स क्षयः ॥७॥

पाँचै किसिमका प्रजाले सँगै मिलेर इन्द्रदेवको प्रार्थना गर्दा इन्द्रदेव आफ्ना पराक्रमले शत्रु संहार गर्दछन्। महान् इन्द्रदेव विप्रद्वारा अधिकारपूर्वक सम्मान प्राप्त गर्दछन्।

इयमु ते अनुष्टुतिश्चकृषे तानि पौंस्या। प्रावश्चक्रस्तु वर्तनिम् ॥८॥

हे इन्द्रदेव ! तिमीले प्रदर्शित गरेको शौर्यका लागि हामी प्रार्थना गर्दछौँ। तिमी हाम्रा रथको मार्ग संरक्षित गर।

अस्य वृष्णो व्योदन उरु क्रमिष्ट जीवसे। यवं न पश्व आ ददे ॥९॥

पशुले जस्तै मानिसहरूले पनि उनै शक्तिशाली इन्द्रदेवबाट जौ आदि अन्न प्राप्त गरेर जीवित रहनका लागि उत्कृष्ट कर्म गर्दछन्।

तद्धाना अवस्यवो युष्माभिर्दक्षपितरः। स्याम मरुत्वतो वृधे ॥१०॥
हे याजक हो ! रक्षणको कामना गर्ने हामी याजक मरुत्वान् इन्द्रदेवको कीर्ति वृद्धि गर्दै सबैका सहयोगले धनधान्यले परिपूर्ण होऔँ।

बड्डुत्वियाय धाम्न ऋक्वभिः शूर नोनुमः। जेषामेन्द्र त्वया युजा ॥११॥
हे पराक्रमी इन्द्रदेव ! तिमी यज्ञको पालन गर्ने र ओजस्वी हौ। हामी तिम्रो सहयोगले विजयी होऔँ।

अस्मे रुद्रा मेहना पर्वतासो वृत्रहत्ये भरहूतौ सजोषाः।
यः शंसते स्तुवते धायि पज्र इन्द्रज्येष्ठा अस्माँ अवन्तु देवाः ॥१२॥
समस्त देवताहरूमा वृत्रहन्ता इन्द्रदेव प्रमुख शक्तिशाली छन्। उनी स्तोताका नजिकै आउँछन्। रुद्रगणसँगै उनले वर्षा गराउने मेघबाट रणक्षेत्रमा हाम्रो संरक्षण गरुन्।

[सूक्त - ६४]

ऋषि - प्रगाथ काण्व। देवता - इन्द्र। छन्द - गायत्री।

उत्त्वा मन्दन्तु स्तोमाः कृणुष्व राधो अद्रिवः। अव ब्रह्मद्विषो जहि ॥१॥
हे इन्द्रदेव ! यो सोमरस तिमीलाई आनन्द प्रदान गर्ने होस्। हे वज्रधारी इन्द्रदेव ! हामीलाई तिमी ऐश्वर्य प्रदान गर र ज्ञानसित द्वेष गर्नेलाई संहार गर।

पदा पणीँरराधसो नि बाधस्व महाँ असि। नहि त्वा कश्चन प्रति ॥२॥
हे इन्द्रदेव ! तिमी महान् छौ। तिम्रो जस्तो सामर्थ्य कसैसित छैन। तिमी यज्ञ आदि कर्म नगर्ने कृपणलाई दुःख देऊ।

त्वमीशिषे सुतानामिन्द्र त्वमसुतानाम्। त्वं राजा जनानाम् ॥३॥
हे इन्द्रदेव ! तिमी सिद्ध रसले युक्त पदार्थ र निषिद्ध पदार्थका स्वामी हौ। तिमी समस्त प्राणीका शासक हौ।

एहि प्रेहि क्षयो दिव्या३ घोषञ्चर्षणीनाम्। ओभे पृणासि रोदसी ॥४॥
हे इन्द्रदेव ! तिमी यज्ञस्थलमा आऊ र उद्घोष गर्दै स्वर्गलोकतर्फ जाऊ। तिमी आफ्ना ओजले धर्ती र आकाशलाई सन्तुष्ट गराउँछौ।

त्वं चित्पर्वतं गिरिं शतवन्तं सहस्रिणम्। वि स्तोतृभ्यो रुरोजिथ ॥५॥
हे इन्द्रदेव ! तिमी त्यस पहाडजस्तै वज्रले सयौं वा हजारौं मेघ फुटाऊ। हामी स्तुति गर्नेहरूको कल्याण गर।

वयमु त्वा दिवा सुते वयं नक्तं हवामहे। अस्माकं काममा पृण ॥६॥
हे इन्द्रदेव ! सोम अभिषव गर्दाखेरि हामी सहायताका लागि तिमीलाई बोलाउँछौं। तिमी हाम्रो अभिलाषा पूरा गराऊ।

क्व१ स्य वृषभो युवा तुविग्रीवो अनानतः। ब्रह्मा कस्तं सपर्यति ॥७॥
युवा, सशक्त गर्धन भएका र कसैसित पनि नझुक्ने इन्द्रदेव यस बेला कहाँ छन् ? कुन याजकले उनको पूजा गर्दछन् ?

कस्य स्वित्सवनं वृषा जुजुष्वाँ अव गच्छति। इन्द्रं क उ स्विदा चके ॥८॥
शक्तिशाली इन्द्रदेव कुन मानिसका यज्ञमा हवि ग्रहण गर्नका लागि आउँछन् ? त्यस्ता इन्द्रदेवका विषयमा कुन याजकलाई थाहा छ ?

कं ते दाना असक्षत वृत्रहन्कं सुवीर्या। उक्थे क उ स्विदन्तमः ॥९॥
हे वृत्रहन्ता इन्द्रदेव ! तिमी कुन व्यक्तिलाई ऐश्वर्य प्रदान गर्दछौ ? कुन व्यक्तिलाई सामर्थ्य प्रदान गर्दछौ र कसका नजिकै यज्ञमा बस्दछौ ?

अयं ते मानुषे जने सोमः पूरुषु सूयते। तस्येहि प्र द्रवा पिब ॥१०॥
हे इन्द्रदेव ! तिम्रा निम्ति मानिसहरू सोम पेल्दछौं। यथाशीघ्र आएर सोमरस पान गर।

अयं ते शर्यणावति सुषोमायामधि प्रियः। आर्जीकीये मदिन्तमः ॥११॥
शर्यणावत्, सुषोमा र आर्जीकीया भन्ने ठाउँमा पाएको वा तयार भएका सोमले तिमीलाई अनन्दित गराओस्।

**तमद्य राधसे महे चारुं मदाय घृष्वये। एहीमिन्द्र द्रवा पिब ॥१२॥**

हे इन्द्रदेव ! हामीलाई प्रचुर ऐश्वर्य प्रदान गर्नका लागि र शत्रुको संहार गर्नका लागि तिमी जति सक्दो चाँडो आएर श्रेष्ठ सोमरस पान गर।

**[सूक्त – ६५]**

**ऋषि** – प्रगाथ काण्व। **देवता** – इन्द्र। **छन्द** – गायत्री।

**यदिन्द्र प्रागपागुदङ्न्यग्वा हूयसे नृभिः। आ याहि तूयमाशुभिः ॥१॥**

यज्ञ आदि असल कर्ममा खटेका साधनले सबै दिशाबाट जसको आह्वान गर्छन्, त्यस्ता इन्द्र सकेसम्म चाँडो आफ्नो फुर्तिला अश्वमा आऊन्।

**यद्वा प्रस्रवणे दिवो मादयासे स्वर्णरि। यद्वा समुद्रे अन्धसः ॥२॥**

हे इन्द्रदेव ! तिमी दिव्यलोकको अमृतरूपी शक्तिधारा, अन्तरिक्षका रसधारा र पृथ्वीमा यज्ञ आदिका समयमा प्रवाहित हुने सोमरसका धाराले पुष्ट र हर्षित हुन्छौ।

**आ त्वा गीर्भिर्महामुरुं हुवे गामिव भोजसे। इन्द्र सोमस्य पीतये ॥३॥**

हे महान् इन्द्रदेव ! गाईलाई खाने कुरो दिनका लागि बोलाएझैं आफ्ना स्तुतिले सोमरस पान गर्नका लागि तिमीलाई आह्वान गर्दछौं।

**आ त इन्द्र महिमानं हरयो देव ते महः। रथे वहन्तु बिभ्रतः ॥४॥**

हे इन्द्रदेव ! महान् महिमाले सम्पन्न तिम्रो अश्व रथ लिएर यहाँसम्म आओस्।

**इन्द्र गृणीष उ स्तुषे महाँ उग्र ईशानकृत्। एहि नः सुतं पिब ॥५॥**

हे पराक्रमी र सबैका अधिष्ठाता इन्द्रदेव ! तिमी अत्यन्त महान् छौ। हामी प्रार्थनाले तिम्रो गुणगान गर्दछौं। तिमी हाम्रा नजिकै आएर सोमरस पान गर।

**सुतावन्तस्त्वा वयं प्रयस्वन्तो हवामहे। इदं नो बर्हिरासदे ॥६॥**

हे इन्द्रदेव ! हविष्यान्नले युक्त सोम पेल्ने हामी याजकहरू कुशका पवित्र आसनमा बस्न तिमीलाई आह्वान गर्दछौं।

**यच्चिद्धि शश्वतामसीन्द्र साधारणस्त्वम्। तं त्वा वयं हवामहे ॥७॥**

हे इन्द्रदेव ! तिमी अनेकौं मानिसका लागि सामन्यतः उपलब्ध रहन्छौ। त्यसै कारणले हामी तिमीलाई बोलाउँछौं।

**इदं ते सोम्यं मध्वधुक्षन्नद्रिभिर्नरः। जुषाण इन्द्र तत्पिब ॥८॥**

हे इन्द्रदेव ! हामी याजकहरू ढुङ्गाले पिसेर सोम तयार गर्दछौं। तिमी हर्षित भएर त्यो मधुर सोमरस पान गर।

**विश्वाँ अर्यो विपश्चितोऽति ख्यस्तूयमा गहि। अस्मे धेहि श्रवो बृहत् ॥९॥**

हे महान् इन्द्रदेव ! चाँडै आऊ र सबै विप्रहरूलाई नाघेर हामीलाई ऐश्वर्य प्रदान गर।

**दाता मे पृषतीनां राजा हिरण्यवीनाम्। मा देवा मघवा रिषत् ॥१०॥**

स्वर्ण र गाईका स्वामी हे इन्द्रदेव ! हामीलाई ऐश्वर्य प्रदान गर्ने तिमी नै हौ। हे देवताहरू हो ! ती इन्द्रदेवलाई कसैले बाधा नपुऱ्याओस्।

**सहस्रे पृषतीनामधि श्चन्द्रं बृहत्पृथु। शुक्रं हिरण्यमा ददे ॥११॥**

हजारौं गाईका रूपमा इन्द्रदेवले प्रदान गर्ने श्रेष्ठ, प्रचुर र तेजपूर्ण ऐश्वर्य ग्रहण गरौं।

**नपातो दुर्गहस्य मे सहस्रेण सुराधसः। श्रवो देवेष्वक्रत ॥१२॥**

हामी असुरक्षित र पीडित छौं। हाम्रा आफन्तहरू हजारौं प्रकारका ऐश्वर्यका स्वामी होऊन् र देवताहरूका बीचमा यशस्वी बनून्।

**[सूक्त – ६६]**

**ऋषि** – कलि प्रागाथ। **देवता** – इन्द्र। **छन्द** – प्रगाथ अनुष्टुप्।

**तरोभिर्वो विदद्वसुमिन्द्रं सबाध ऊतये।**
**बृहद् गायन्तः सुतसोमे अध्वरे हुवे भरं न कारिणम् ॥१॥**

बालकले अभिभावक गुहारेझैं हामी आफ्ना हितैषि इन्द्रदेवलाई सहायताका लागि बोलाउँछौं। सोमयज्ञमा ऐश्वर्य दिने, वेगवान् अश्वयुक्त इन्द्रदेवलाई आफ्नो रक्षाका लागि आराधना गरौं।

न यं दुधा वरन्ते न स्थिरा मुरो मदे सुशिप्रमन्धसः।
य आदृत्या शशमानाय सुन्वते दाता जरित्र उक्थ्यम् ॥२॥

सुन्दर आकृति भएका इन्द्रदेवलाई प्राणको बाजी लगाउने असुरले पनि हराउन सक्दैन। ऐश्वर्य प्रदाता, सोमरस पिएर आनन्दित हुने इन्द्रदेवलाई हामी स्तुति गर्दछौं। सोमयज्ञ गर्ने र भावपूर्ण स्तुति गर्ने याजकलाई उनी सहयोग गर्छन्।

यः शक्रो मृक्षो अश्व्यो यो वा कीजो हिरण्ययः।
स ऊर्वस्य रेजयत्यपावृतिमिन्द्रो गव्यस्य वृत्रहा ॥३॥

इन्द्रदेव अत्यन्त शक्तिशाली र ऐश्वर्यवान् छन्। उनी अश्वले सम्पन्न, अद्भुत र वृत्ररूपी शत्रु संहार गर्दछन्। गाईलाई दुःख दिनेलाई उनी डर देखाएर थर्काइदिन्छन्।

निखातं चिद्यः पुरुसम्भृतं वसूदिद्वपति दाशुषे।
वज्री सुशिप्रो हर्यश्व इत् करदिन्द्रः क्रत्वा यथा वशत् ॥४॥

मुकुट लगाएका र वज्र लिएका, घोडा चढ्ने इन्द्रदेव आफ्नो मन लागेको काम गर्दछन्। उनी जम्मा पारिएको प्रचुर ऐश्वर्य दानी याजकका लागि बाहिर निकाल्दछन्।

यद्वावन्थ पुरुष्टुत पुरा चिच्छूर नृणाम्।
वयं तत्त इन्द्र सं भरामसि यज्ञमुक्थं तुरं वचः ॥५॥

धेरैले प्रशंसा गरिएका हे पराक्रमी इन्द्रदेव ! तिमीले पुराना अनुभवी याजकबाट कामना गरेको कुरो हामी पूर्ति गर्दछौं। तिमीलाई हामी यज्ञ, उक्थ र प्रार्थना समर्पित गर्दछौं।

सचा सोमेषु पुरुहूत वज्रिवो मदाय द्युक्ष सोमपाः।
त्वमिद्धि ब्रह्मकृते काम्यं वसु देष्ठः सुन्वते भुवः ॥६॥

अनेकौं तिरबाट बोलाइने र वज्र लिएका हे इन्द्रदेव ! तिमी तेजले सम्पन्न र सोमपान गर्ने हौ। सोम पेल्दाखेरि तिमी हर्षित हुनका लागि भेला हुन्छौ। स्तोता र सोमयज्ञ गर्नेहरूले मन पराएको ऐश्वर्य तिमी प्रदान गर्दछौ।

वयमेनमिदा ह्योऽपीपेमेह वज्रिणम्।
तस्मा उ अद्य समना सुतं भरा नूनं भूषत श्रुते ॥७॥

हामी याजकले इन्द्रदेवलाई हिजो सोमरसले सन्तुष्ट गराएका थियौं। उनलाई आजका यज्ञमा पनि सोमरस प्रदान गर्दछौं। हे याजक हो ! यस बेला स्तोत्र गाएर इन्द्रदेवलाई सुहाउँदिलो बनाओ।

वृकश्चिदस्य वारण उरामथिरा वयुनेषु भूषति।
सेमं नः स्तोमं जुजुषाण आ गहीन्द्र प्र चित्रया धिया ॥८॥

ब्वाँसाजस्ता क्रूर शत्रु पनि इन्द्रदेवका अगाडि सोझा हुन थाल्दछन्। उनले हाम्रो प्रार्थना स्वीकार गर्दै हामीलाई उत्कृष्ट चिन्तनले युक्त विवेकबुद्धि प्रदान गरुन्।

कदू न्वस्याकृतमिन्द्रस्यास्ति पौंस्यम्।
केनो नु कं श्रोमतेन न शुश्रुवे जनुषः परि वृत्रहा ॥९॥

इन्द्रदेवले नगरेको कुन पुरुषार्थ होला र उनका वीरताको गाथा कसले नसुनेको होला ? वृत्र संहार गर्ने इन्द्रदेव बालकैदेखि विख्यात छन्।

कदू महीरधृष्टा अस्य तविषीः कदु वृत्रघ्नो अस्तृतम्।
इन्द्रो विश्वान् बेकनाटाँ अहर्दृश उत क्रत्वा पणीँरभि ॥१०॥

इन्द्रदेवले आफ्ना महान् पराक्रमले शत्रुलाई कहिले संहार गरेनन् र ? उनको शत्रु वृत्र उनीबाट कहिले नमारिएको हो र ? उनका कर्मले लोभी र कन्जुस नष्ट हुन्छन्।

वयं घा ते अपूर्व्येन्द्र ब्रह्माणि वृत्रहन्।
पुरूतमासः पुरुहूत वज्रिवो भृतिं न प्र भरामसि ॥११॥

अनेकौं तिरबाट बोलाइने र वृत्र संहार गर्ने हे इन्द्रदेव ! तिमी वज्र धारण गर्दछौ। नौला स्तोत्रले हामी सेवकजस्तो भएर तिम्रो स्तुति गर्दछौं।

पूर्वीश्चिद्धि त्वे तुविकूर्मिन्नाशसो हवन्त इन्द्रोतयः।
तिरश्चिदर्यः सवना वसो गहि शविष्ठ श्रुधि मे हवम् ॥१२॥

हे इन्द्रदेव ! तिमी अनेकौं असल कर्म गर्दछौ। तिम्रा नजिकै अनेकौं संरक्षण साधन उपलब्ध छन्।

त्यसै कारणले तिमीलाई हामी बोलाउँछौं। शक्तिशाली र सबैलाई निवास प्रदान गर्ने हे इन्द्रदेव! तिमी हाम्रो स्तुति सुनिसकेपछि अरूलाई उछिनेर हाम्रो यज्ञमण्डपमा आऊ।

**वयं घा ते त्वे इद्विन्द्र विप्रा अपि ष्मसि।**
**नहि त्वदन्यः पुरुहूत कश्चन मघवन्नस्ति मर्डिता॥१३॥**

हे धनवान् इन्द्रदेव ! तिमी धेरै तिरबाट बोलाइन्छौ। हामी याजकहरू तिम्रै आश्रयमा रहौं। हामीलाई तिमीबाहेक अरू कोही पनि सुख दिनेभैं लाग्दैनन्।

**त्वं नो अस्या अमतेरुत क्षुधोऽ३ भिशस्तेरव स्पृधि।**
**त्वं न ऊती तव चित्रया धिया शिक्षा शचिष्ठ गातुवित्॥१४॥**

हे बलशाली इन्द्रदेव ! तिमी सत्य मार्गका ज्ञाता हौ। हामीलाई निर्धनता र अनिकालको अभिशापबाट मुक्त गर। तिमी आफ्ना वीरतापूर्ण विचित्र कार्य र संरक्षण साधनले हामीलाई समर्थ बनाऊ।

**सोम इद्वः सुतो अस्तु कलयो मा बिभीतन।**
**अपेदेष ध्वस्मायति स्वयं घैषो अपायति॥१५॥**

हे कलिका वंशज हो ! तिमीहरूले पेलेको सोम इन्द्रदेवलाई प्रस्तुत गर। तिमीहरू नडराओ, किनभने हिंसा गर्नेहरू आफैं पर भाग्दै छन्।

## [सूक्त – ६७]

**ऋषि** – मत्स्य साम्मद मैत्रावरुणि। **देवता** – आदित्यगण। **छन्द** – गायत्री।

**त्यान्नु क्षत्रियाँ अव आदित्यान्याचिषामहे। सुमृडीकाँ अभिष्टये॥१॥**

श्रेष्ठ सुख प्रदान गर्ने र शत्रुका आक्रमणबाट बचाउने आदित्यहरूसित आफ्नो अभीष्ट पूर्ति गर्नका लागि हामी सुरक्षाको याचना गर्दछौं।

**मित्रो नो अत्यंहतिं वरुणः पर्षदर्यमा। आदित्यासो यथा विदुः॥२॥**

मित्र, वरुण, अर्यमा र आदित्यले उचित किसिमले हामीलाई दुष्कर्मबाट जोगाऊन्।

**तेषां हि चित्रमुक्थ्यं१ वरूथमस्ति दाशुषे। आदित्यानामरङ्कृते॥३॥**

आदित्यहरूसित वरण गर्न योग्य र प्रशंसा गर्न योग्य मनग्गे ऐश्वर्य छ। उनीहरू हवि प्रदान गर्ने र बलशाली यजमानलाई महान् ऐश्वर्य प्रदान गर्दछन्।

**महि वो महतामवो वरुण मित्रार्यमन्। अवांस्या वृणीमहे॥४॥**

हे मित्रावरुण र अर्यमादेव हो ! तिमीहरू र तिमीहरूको सुरक्षा प्रक्रिया दुवै महान् छन्। तिमीहरूबाट हामी सुरक्षाको कामना गर्दछौं।

**जीवान्नो अभि धेतनादित्यासः पुरा हथात्। कद्ध स्थ हवनश्रुतः॥५॥**

हे आदित्यहरू हो ! तिमीहरू हाम्रो स्तुति सुन्दछौ। जहाँ भए पनि हाम्रो मृत्युभन्दा पहिले नै चाँडै आओ।

**यद्वः श्रान्ताय सुन्वते वरूथमस्ति यच्छर्दिः। तेना नो अधि वोचत॥६॥**

हे देवताहरू हो ! सोमयज्ञ गर्ने याजकलाई तिमीहरू ऐश्वर्य र घर प्रदान गर्दछौ, त्यसैबाट हामीलाई पनि सम्पन्न गराओ।

**अस्ति देवा अंहोर्वस्ति रत्नमनागसः। आदित्या अद्भुतैनसः॥७॥**

दुष्कर्म गर्ने मानिसहरू पापका भागी हुन्छन्। सत्कर्म गर्नेको पुण्य ज्यादै रमाइलो हुन्छ। हे आदित्यहरू हो ! हामीलाई पापबाट मुक्त गर र सन्मार्गको पथ प्रशस्त गराओ।

**मा नः सेतुः सिषेदयं महे वृणक्तु नस्परि। इन्द्र इद्धि श्रुतो वशी॥८॥**

विख्यात इन्द्रदेव सबैलाई वशीभूत गराउँछन्। उनी महान् कर्म गर्दा बाधा नपारेर बन्धनमुक्त गराउँछन्।

**मा नो मृचा रिपूणां वृजिनानामविष्यवः। देवा अभि प्र मृक्षत॥९॥**

रक्षा गर्नका लागि इच्छुक हे देवताहरू हो ! कपटी शत्रुको हिंसक कार्यले हामीलाई पीडित नगरोस्। उनका हिंसक कार्यबाट हामीलाई मुक्त गर।

उत त्वामदिते मह्याहं देव्युप ब्रुवे। सुमृडीकामभिष्टये ॥१०॥
हे महान् अदिति देवी ! तिमी श्रेष्ठ सुख प्रदान गर्दछ्यौ। अभीष्ट कामना पूरा गर्नका लागि तिमीलाई हामी प्रार्थना गर्दछौँ।

पर्षि दीने गभीर आँ उग्रपुत्रे जिघांसतः। माकिस्तोकस्य नो रिषत् ११॥
पराक्रमी सन्तानले सम्पन्न हे अदिति देवी ! हिंस्रक प्रवृत्तिका मानिसले दुःखी वा सुखी जुनै अवस्थामा पनि हाम्रा सन्तानको हत्या नगरुन्।

अनेहो न उरुव्रज वि प्रसर्तवे। कृधि तोकाय जीवसे ॥१२॥
हे महान् आदित्यगण ! हिंसारहित, श्रेष्ठ गमनयोग्य हाम्रो पथ सबै तिरबाट सुरक्षित होस्। हाम्रा सन्तानलाई तिमी दीर्घायु प्रदान गर।

ये मूर्धानः क्षितीनामदब्धासः स्वयशसः। व्रता रक्षन्ते अद्रुहः ॥१३॥
हे आदित्य हो ! तिमीहरू कीर्तिमान छौ। प्रमाद र विद्रोहरहित भएर हामी मानिसका कर्मलाई संरक्षण प्रदान गर्दछौ।

ते ना आस्नो वृकाणामादित्यासो मुमोचत। स्तेनं बद्धमिवादिते ॥१४॥
हे अदिति माता र आदित्यहरू हो ! चोरझैँ छलले बाँधिएका हामीलाई हिंस्रक दुष्टका मुखबाट जोगाओ।

अपो षु ण इयं शरुरादित्या अप दुर्मतिः। अस्मदेत्वजघ्नुषी ॥१५॥
हे आदित्य हो ! घातक साधन हाम्रो हिंसा नगरीकन हामीबाट पर जाऊन्। दुर्बुद्धि पनि हामीदेखि पर होस्।

शश्वदि वः सुदानव आदित्या ऊतिभिर्वयम्। पुरा नूनं बुभुज्महे ॥१६॥
श्रेष्ठ, दानी हे आदित्य हो ! तिमीहरूका रक्षणसाधनले संरक्षित भएर हामी सधैँ श्रेष्ठ सुखको उपभोग गरिरहौँ।

शश्वन्तं हि प्रचेतसः प्रतियन्तं चिदेनसः। देवाः कृणुथ जीवसे ॥१७॥
हे विद्वान् देवता हो ! हामीलाई मार्न खोज्ने पापीलाई पर भगाएर दीर्घायु प्रदान गर।

तत्सु नो नव्यं सन्यस आदित्या यन्मुमोचति। बन्धाद् बद्धमिवादिते ॥१८॥
हे अदितिदेवी र आदित्य हो ! बाँधिएका व्यक्तिको बन्धन तिमीहरू छुटाएझैँ तिमीहरूका प्रार्थनायोग्य बलले हामीलाई पनि बन्धनबाट मुक्त गरोस्।

नास्माकमस्ति तत्तर आदित्यासो अतिष्कदे। यूयमस्मभ्यं मृडत ॥१९॥
हे आदित्य हो ! तिमीहरूजस्ता वेगवान् हामी छैनौँ। तिमीहरूका त्यस वेगले हामीलाई सङ्कटबाट मुक्त गर्न सक्दछ। त्यसैले हामीलाई सुख प्रदान गर।

मा नो हेतिर्विवस्वत आदित्याः कृत्रिमा शरुः। पुरा नु जरसो वधीत् ॥२०॥
हे आदित्य हो ! यमको घातक आयुधले वृद्धावस्थाभन्दा पहिले विनाश नगरोस्।

वि षु द्वेषो व्यंहतिमादित्यासो वि संहितम्। विष्वग्वि वृहता रपः ॥२१॥
हे आदित्य हो ! विद्वेषी, पापी र तिनीहरूको सङ्गठन विनाश गरेर पापलाई सबै ठाउँबाट पर हटाओ।

[सूक्त - ६८]

ऋषि - प्रियमेध आङ्गिरस। देवता - इन्द्र ऋक्ष अश्वमेध। छन्द - गायत्री अनुष्टुप्।

आ त्वा रथं यथोतये सुम्नाय वर्तयामसि।
तुविकूर्मिमृतीषहमिन्द्र शविष्ठ सत्पते ॥१॥
शत्रुलाई पराजित गर्ने, शौर्ययुक्त, यजमानका पोषक हे शक्तिशाली इन्द्रदेव ! संरक्षण र सुखका लागि गतिशील रथजस्तै तिमीलाई हामी यज्ञस्थलमा लिएर आउँछौँ।

तुविशुष्म तुविक्रतो शचीवो विश्वया मते। आ पप्राथ महित्वना ॥२॥
महान् शक्तिमान्, धेरै खालका उत्तम कर्म गर्ने, पूज्य हे इन्द्रदेव ! तिमी सबै किसिमका महिमाले युक्त भएर संसार भरमा व्याप्त रहन्छौ।

यस्य ते महिना महः परि ज्मायन्तमीयतुः । हस्ता वज्रं हिरण्ययम् । ॥३॥
हे सुनौलो वज्रधारी इन्द्रदेव ! तिम्रा महान् हातहरू सर्वत्र व्यापक र गतिशील छन् ।

विश्वानरस्य वस्पतिमनानतस्य शवसः । एवैश्च चर्षणीनामूती हुवे रथानाम् ॥४
हे मरुत्‌हरू हो ! तिमीहरूका सैनिकमाथि हुने आक्रमणका समयमा रथको सुरक्षा गर्न हामी शत्रुका सैनिकमाथि आक्रमण गर्ने, अजेय, बलशाली इन्द्रदेवलाई आह्वान गर्दछौं ।

अभिष्टये सदावृधं स्वर्मीळ्हेषु यं नरः । नाना हवन्त ऊतये ॥५॥
सबै मानिसहरू सङ्ग्राममा आफ्नो सुरक्षाका लागि र रुचाएको पाउनका लागि जसको आह्वान गर्दछन्, सधैंका विकासमान उनै इन्द्रदेवलाई हामी पनि आह्वान गर्दछौं ।

परोमात्रमृचीषममिन्द्रमुग्रं सुराधसम् । ईशानं चिद्वसूनाम् ॥६॥
अति पराक्रमी, सम्पत्तिवान्, असीम प्रार्थनाका इच्छुक र ऐश्वर्यका स्वामी इन्द्रदेवलाई हामी आह्वान गर्दछौं ।

तं तमिद्राधसे मह इन्द्रं चोदामि पीतये । यः पूर्व्यामनुष्टुतिमीशे कृष्टीनां नृतुः ॥
सबैका नायक र स्तोताको पुरानो प्रार्थना सुन्ने इन्द्रदेवलाई हामी श्रेष्ठ सम्पत्ति प्राप्त गर्नका लागि सोमपानमा आह्वान गर्दछौं ।

न यस्य ते शवसान सख्यमानंश मर्त्यः । नकिः शवांसि ते नशत् ॥८॥
हे शक्तिशाली इन्द्रदेव ! कसैले तिम्रो मित्रता र सामर्थ्यको प्रतिद्वन्द्विता गर्न सक्दैन ।

त्वोतासस्त्वा युजाप्सु सूर्ये महद्धनम् । जयेम पृत्सु वज्रिवः ॥९॥
वज्र धारण गर्ने हे इन्द्रदेव ! तिमीबाट सुरक्षित भएर र तिम्रो कृपा प्राप्त गरेर हामी सूर्योदय कालमा यज्ञ सम्पन्न गरौं । हामी युद्ध जितेर प्रशस्त सम्पत्ति प्राप्त गरौं ।

तं त्वा यज्ञेभिरीमहे तं गीर्भिर्गिर्वणस्तम ।
इन्द्र यथा चिदाविथ वाजेषु पुरुमाय्यम् ॥१०॥
हे वन्दनीय इन्द्रदेव ! हामी यज्ञ र प्रार्थनाले तिमीलाई आह्वान गर्दछौं । सङ्ग्राममा हामीलाई संरक्षण प्रदान गर ।

यस्य ते स्वादु सख्यं स्वाद्वी प्रणीतिरद्रिवः । यज्ञो वितन्तसाय्यः ॥११॥
हे वज्रधारी इन्द्रदेव ! तिम्रो मित्रता र प्रीति मधुर र सुस्वादयुक्त छ । त्यसैले सबै तिम्रा लागि नै यजन गर्दछन् ।

उरु णस्तन्वे३ तन उरु क्षयाय नस्कृधि । उरु णो यन्धि जीवसे ॥१२॥
हे इन्द्रदेव ! तिमी हाम्रा सन्तानका लागि प्रचुर ऐश्वर्य, हाम्रो आवासका लागि विशाल भवन र जीवनका लागि दीर्घायु प्रदान गर ।

उरुं नृभ्य उरुं गव उरुं रथाय पन्थाम् । देववीतिं मनामहे ॥१३॥
हे इन्द्रदेव ! आफन्तहरूका लागि हामी तिमीसित विशाल ऐश्वर्य, गाईका निम्ति विस्तृत स्थान र रथका निम्ति विस्तृत मार्गको कामना गर्दछौं । यसैले यजन गर्दछौं ।

उप मा षड् द्वाद्वा नरः सोमस्य हर्ष्या । तिष्ठन्ति स्वादुरातयः ॥१४॥
सोमरस पानबाट आनन्दित भएर श्रेष्ठ सम्पत्तिका साथ छ नायकहरू दुईदुईका जोडीमा हामीतिर आउँदै छन् ।

ऋज्राविन्द्रोत आ ददे हरी ऋक्षस्य सूनवि । आश्वमेधस्य रोहिता ॥१५॥
इन्द्रोतबाट ऋजु, ऋक्षका पुत्रबाट प्रेरक र अश्वमेधका पुत्रबाट रोहित नामका अश्वको बलप्रवाह प्राप्त भयो ।

सुरथाँ आतिथिग्वे स्वभीशूँरार्क्षे । आश्वमेधे सुपेशसः ॥१६॥
श्रेष्ठ रथयुक्त ऋक्षका पुत्रबाट सुन्दर लगाम भएको र अश्वमेधका पुत्रबाट सुन्दर स्वरूप भएको अश्व अतिथिग्वका पुत्रले प्राप्त गरे ।

षळश्वाँ आतिथिग्व इन्द्रोते वधूमतः । सचा पूतक्रतौ सनम् ॥१७॥
अतिथिग्वका पुत्र इन्द्रोतका पवित्र कर्मको अनुष्ठानमा हामीले पोथीसहितका छ वटा अश्व एकै चोटि ग्रहण गर्‍यौं ।

ऐषु चेतद्वृषण्वतयन्तर्ऋज्रेष्वरुषी। स्वभीशुः कशावती ॥१८॥
सजिलैसित चल्ने अश्वका बीचमा शक्तिशाली तेजस्वी लगामले युक्त घोडी देखिँदै छ।

न युष्मे वाजबन्धवो निनित्सुश्चन मर्त्यः। अवद्यमधि दीधरत् ॥१९॥
अन्नदान गर्ने हे बन्धु हो ! निन्दक पनि तिमीहरूको निन्दा गर्न सक्षम हुन सक्दैन।

[सूक्त - ६९]

ऋषि - प्रियमेध आङ्गिरस। देवता - इन्द्र विश्वेदेवा। छन्द - अनुष्टुप् उष्णिक् बृहती।

प्रप्र वस्त्रिष्टुभमिषं मन्दद्वीरायेन्दवे। धिया वो मेधसातये पुरन्ध्या विवासति ॥
हे याजक हो ! तीन स्तोत्रले तयार गरिएको हविरूपी अन्न श्रेष्ठ वीर इन्द्रदेवका लागि प्रदान गर। यज्ञ सम्पादन गर्नका लागि विवेकपूर्वक गरिएका सत्कर्मको अभीष्ट फल प्रदान गरेर इन्द्रदेव यजमानलाई सम्मानित गर्दछन्।

नदं व ओदतीनां नदं योयुवतीनाम्। पतिं वो अघ्न्यानां धेनुनामीषुध्यसि ॥२॥
हे यजमान हो ! तिमीहरूका लागि उषा उत्पन्न गर्ने, चन्द्रको किरण उत्पन्न गर्ने, गाई पाल्ने इन्द्रदेवलाई बोलाउँछौं। किनभने तिमीहरू पोषक अन्न रूपमा गाईको दुध प्राप्त गर्ने इच्छा गर्दछौ।

ता अस्य सूददोहसः सोमं श्रीणन्ति पृश्नयः।
जन्मदेवानां विशस्त्रिष्वा रोचने दिवः ॥३॥
सूर्योदय हुँदा गाईले देवताको जन्मस्थानबाट तीनै वटा सवनमा प्रचुर दुध प्रदान गर्छन्। तिनीहरू इन्द्रदेवका लागि आफ्नो दुध सोमरसमा मिसाउँछन्।

अभि प्र गोपतिं गिरेन्द्रमर्च यथा विदे। सूनुं सत्यस्य सत्पतिम् ॥४॥
हे याजक हो ! गाई पाल्ने, सत्यनिष्ठ, सज्जनका संरक्षक इन्द्रदेवलाई मन्त्र उच्चारण गर्दै प्रार्थना गर, त्यसबाट उनका शक्तिको आभास हुन सकोस्।

आ हरयः ससृज्रिरेऽरुषीरधि बर्हिषि। यत्राभि संनवामहे ॥५॥
हामी यज्ञमा इन्द्रदेवको प्रार्थना गर्दछौं। उत्तम अश्वले उनलाई यज्ञशालामा पुऱ्याऊन्।

इन्द्राय गाव आशिरं दुदुह्रे वज्रिणे मधु। यत्सीमुपह्वरे विदत् ॥६॥
यज्ञस्थलका नजिकै इन्द्रदेवले मधुर रस पान गर्दा गाईले वज्र हातमा लिने इन्द्रदेवका लागि मधुर दुध प्रदान गर्दछन्।

उद्यद् ब्रध्नस्य विष्टपं गृहमिन्द्रश्च गन्वहि।
मध्वः पीत्वा सचेवहि त्रिः सप्त सख्युः पदे ॥७॥
इन्द्रदेवसित हामी सूर्यलोकमा गमन गर्दा आफ्ना सखा इन्द्रदेवका श्रेष्ठतम एक्काईसौं स्थानमा मिठो सोमरस पान गरेर एकापसमा भेटौं।

अर्चत प्रार्चत प्रियमेधासो अर्चत। अर्चन्तु पुत्रका उत पुरं न धृष्ण्वर्चत ॥८॥
अर्चत प्रार्चत हे प्रियमेधका वंशज मानिसहरू हो ! यज्ञप्रिय, सन्तान एवं साधकको कामना पूर्ण गराउने र शत्रु पराजित गर्ने इन्द्रदेवको तिमीहरू सबैले सम्मान गर।

अव स्वराति गर्गरो गोधा परि सनिष्वणत्।
पिङ्गा परि चनिष्कददिन्द्राय ब्रह्मोद्यतम् ॥९॥
गर्गरको आवाज आउँदै छ। गोही सबैतिर कराउँदै छन्। पिङ्गाको ध्वनि सबैतिर सुनिँदै छ। यस्तैमा इन्द्रदेवका लागि स्तोत्र उच्चारण गरौं।

आ यत्पतन्त्येन्यःसुदुघा अनपस्फुरः। अपस्फुरं गृभायत सोममिन्द्राय पातवे ॥
उज्ज्वल जलले समृद्ध भएर नदी बग्दा इन्द्रदेवले पिउनका लागि श्रेष्ठ गुणयुक्त मधुर सोमरस लिएर उपस्थित होऔं।

अपादिन्द्रो अपादग्निर्विश्वे देवा अमत्सत।
वरुण इदिह क्षयत्तमापो अभ्यनूषत वत्सं संशिश्वरीरिव ॥११॥
अग्नि, इन्द्र र विश्वेदेवता सोमपान गरेर हर्षित भए। वरुणदेव पनि यहाँ उपस्थित रहून्। बाछो भेट्नका लागि गाई कराएझैं हाम्रा स्तोत्रले उनै वरुणदेवको प्रार्थना गर्दछ।

सुदेवो असि वरुण यस्य ते सप्त सिन्धवः।
अनुक्षरन्ति काकुदं सूर्म्यं सुषिरामिव ॥१२॥

हे वरुणदेव ! किरण सूर्यतर्फ गएझैं तिम्रा ओजले सातै सरिता समुद्रतर्फ बग्छन्।

यो व्यर्तीरफाणयत् सुयुक्ताँ उप दाशुषे।
तक्वो नेता तदिद्वपुरुपमा यो अमुच्यत ॥१३॥

इन्द्रदेव द्रुतगामी अश्व रथमा नियोजित गरेर हवि प्रदाता यजमानकहाँ जान्छन्। विशाल शरीर भएका नायक इन्द्रदेव यज्ञशालामा प्रमुख स्थान प्राप्त गर्दछन्।

अतीदु शक्र ओहत इन्द्रो विश्वा अति द्विषः।
भिनत्कनीन ओदनं पच्यमानं परो गिरा ॥१४॥

इन्द्रदेव अत्यन्त सौन्दर्ययुक्त र शक्तिशाली छन्। उनी समस्त शत्रु र स्तुतिभन्दा पनि पर छन्। उनी जलयुक्त बादल नष्ट गराउँछन्।

अर्भको न कुमारकोऽधि तिष्ठन्नवं रथम्।
स पक्षन्महिषं मृगं पित्रे मात्रे विभुक्रतुम् ॥१५॥

इन्द्रदेव आफ्ना विशाल शरीरले नयाँ रथमा सुशोभित हुन्छन्। उनी विभिन्न श्रेष्ठ कर्म सम्पन्न गर्दै बादललाई जल बर्साउन प्रेरित गर्दछन्।

आ तू सुशिप्र दम्पते रथं तिष्ठा हिरण्ययम्।
अध द्युक्षं सचेवहि सहस्रपादमरुषं स्वस्तिगामनेहसम् ॥१६॥

हे सुन्दर आकृति भएका दम्पती ! हजारौं रश्मिले आलोकित, द्रुतगामी स्वर्णिम रथमा तिमी सजिलो गरी आरुढ होऊ। त्यस बेला हामी दुवैले भेट गरौंला।

तं घेमित्था नमस्विन उप स्वराजमासते।
अर्थं चिदस्य सुधितं यदेतव आवर्तयन्ति दावने ॥१७॥

स्वप्रकाशित इन्द्रदेवको वन्दना गर्ने याजकहरू साधना गर्दछन्। त्यसपछि उनीहरू श्रेष्ठ सम्पत्ति र सद्बुद्धि ग्रहण गर्दछन्।

अनु प्रत्नस्यौकसः प्रियमेधास एषाम्।
पूर्वामनु प्रयतिं वृक्तबर्हिषो हितप्रयस आशत ॥१८॥

कुशको आसन बिछाउने र यज्ञमा हविष्यान्न प्रदान गर्ने प्रियमेध ऋषिका सन्तानले उनै इन्द्रदेवको शाश्वत निवासस्थान प्राप्त गरे।

[सूक्त – ७०]

**ऋषि** – पुरुहन्मा आङ्गिरस। **देवता** – इन्द्र। **छन्द** – बृहती प्रगाथ उष्णिक् अनुष्टुप्।

यो राजा चर्षणीनां याता रथेभिरध्रिगुः।
विश्वासां तरुता पृतनानां ज्येष्ठो यो वृत्रहा गृणे ॥१॥

मानवका अधिपति, वेगवान्, शत्रुसेना संहारक, वृत्रहन्ता इन्द्रदेवलाई हामी स्तुति गर्छौं।

इन्द्रं तं शुम्भ पुरुहन्मन्नवसे यसय द्विता विधर्तरि।
हस्ताय वज्रः प्रति धायि दर्शतो महो दिवे न सूर्यः ॥२॥

हे साधक हो ! आफ्नो रक्षाका लागि देवराज इन्द्रको उपासना गर। उनका संरक्षणमा रक्षा विनाश दुवै शक्ति छन्। इन्द्रदेव सूर्यजस्तै तेजस्वी वज्र हातमा लिन्छन्।

नकिष्टं कर्मणा नशद्यश्चकार सदावृधम्।
इन्द्रं न यज्ञैर्विश्वगूर्तमृभ्वसमधृष्टं धृष्ण्वोजसम् ॥३॥

स्तुत्य, महाबलशाली, समृद्ध, अपराजित, शत्रु दमन गर्ने इन्द्रदेवलाई यज्ञ आदि कर्मले आफ्नो सहचर बनाउने साधकको कर्म कसैले नष्ट गर्न सक्दैन।

अषाळ्हमुग्रं पृतनासु सासहिं यस्मिन्महीरुरुज्रयः।
सं धेनवो जायमाने अनोनवुर्द्यावः क्षामो अनोनवुः ॥४॥

इन्द्रदेवलाई प्रकट रूपमा नै महान् वेगशाली गाई, पृथ्वी र आकाशले समेत अगाडि झुकेर अभिवादन गर्दछन्। ती उग्र, शत्रुविजेता र पराक्रमीलाई हामी स्तुति गर्दछौं।

यद् द्याव इन्द्र ते शतं शतं भूमीरुत स्युः।
न त्वा वज्रिन्त्सहस्रं सूर्या अनु न जातमष्ट रोदसी ॥५॥

हे इन्द्रदेव ! सयौं देवलोक, सयौं भूमि र हजारौं सूर्य उत्पन्न होऊन् तापनि तिम्रो सामना गर्न सक्दैनन्। द्यावापृथिवीमा तिम्रो बराबरी कसैले गर्न सक्दैन।

आ पप्राथ महिना वृष्ण्या वृषन्विश्वा शविष्ठ शवसा।
अस्माँ अव मघवन्गोमति व्रजे वज्रिञ्चित्राभिरूतिभिः ॥६॥

हे बलशाली इन्द्रदेव ! तिमी आफ्ना सामर्थ्यले सबैका इच्छा पूरा गराउँछौ। हे बलवान्, धनवान्, वज्रधारी इन्द्रदेव ! तिमी गाईले युक्त संरक्षण हामीलाई प्रदान गर।

न सीमदेव आपदिषं दीर्घायो मर्त्यः।
एतग्वा चिद्य एतशा युयोजते हरी इन्द्रो युयोजते ॥७॥

हे दीर्घजीवी इन्द्रदेव ! तिमीले शुभ्र वर्णका दुई अश्व आफूसित गाँसेका छौ र हरियो अश्व पनि गाँस्दछौ।

तं वो महो महाय्यमिन्द्रं दानाय सक्षणिम्।
यो गाधेषु य आरणेषु हव्यो वाजेष्वस्ति हव्यः ॥८॥

हे याजक हो ! मित्रजस्ता इन्द्रदेवलाई जुन स्थान, निवास र सङ्ग्राममा आह्वान गर्छौ, तिमीहरू त्यहाँ उनैको धनऐश्वर्य प्राप्त गर्नका लागि प्रार्थना गर।

उदू षु णो वसो महे मृशस्व शूर राधसे।
उदू षु मह्यै मघवन्मघत्तय उदिन्द्र श्रवसे महे ॥९॥

पराक्रमी तथा सम्पत्तिवान् हे इन्द्रदेव ! हामीलाई प्रदान गर्नका लागि तिमी श्रेष्ठ सम्पत्ति विकसित गर। हामीलाई तिमी श्रेष्ठ अन्न ग्रहण गर्न सक्ने योग्य बनाऊ।

त्वं न इन्द्र ऋतयुस्त्वानिदो नि तृम्पसि।
मध्ये वसिष्व तुविनृम्णोर्वोर्नि दासं शिश्नथो हथैः ॥१०॥

हे अति पराक्रमी यज्ञरक्षक इन्द्रदेव ! तिमी निन्दकको ऐश्वर्य खोसेर हामीलाई सन्तुष्ट गराऊ। तिमी शस्त्रले दस्यु संहार गरेर हामीलाई आफ्नो महान् आश्रय प्रदान गर।

अन्यव्रतममानुषमयज्वानमदेवयुम्।
अव स्वः सखा दुधुवीत पर्वतः सुघ्नाय दस्युं पर्वतः ॥११॥

देवताका निन्दक, मानवताले शून्य अयाज्ञिक र धार्मिक कार्य नगर्नेलाई सखारूपी पर्वत ऋषि स्वर्गबाट पतित गराउँछन्। ती पर्वत ऋषि त्यस्ता दुष्टलाई वध गर्ने योद्धाका जिम्मा लगाउँछन्।

त्वं न इन्द्रासां हस्ते शविष्ठ दावने।
धानानां न सं गृभायास्मयुर्द्विः सं गृभायास्मयुः ॥१२॥

हे शक्तिशाली इन्द्रदेव ! तिमी हाम्रो अभिलाषा पूरा गर्दछौ। याजकले यज्ञका लागि धानको लावा समर्पित गरेझैं हाम्रा हातमा तिमी गाई र पुत्र दिने गर।

सखायः क्रतुमिच्छत कथा राधाम शरस्य। उपस्तुतिं भोजः सूरिर्योअह्रयः ॥१३

हे मित्र हो ! हामी अन्न प्रदाता, कपटरहित र ज्ञानी इन्द्रदेवलाई कसरी प्रार्थना गरौं ? उनी शौर्य प्रकट गर्ने अभिलाषाले शत्रु संहार गर्दछन्।

भूरिभिः समह ऋषिभिर्बर्हिष्मद्भिः स्तविष्यसे।
यदित्थमेकमेकमिच्छर वत्सान्परादद ॥१४॥

शत्रु विनाश गर्ने हे वन्दनीय इन्द्रदेव ! तिमीले हामीलाई बाछासहितका अनेकौं गाई प्रदान गर्दा अनेकौं ऋषि र याज्ञिकले तिम्रो प्रशंसा गर्दछन्।

कर्णगृह्या मघवा शौरदेव्यो वत्सं नस्त्रिभ्य आनयत्। अजां सूरिर्न धातवे ॥१५

हे सम्पत्तिवान् इन्द्रदेव ! बाठा मालिकले बाख्राका कान छामेर लगेझैं तिमी पराक्रमले प्राप्त हुने दिव्य गाई हामीकहाँ लिएर आऊ।

[सूक्त – ७१]

**ऋषि** – सुदीति पुरुमीढह आङ्गिरस। **देवता** – अग्नि। **छन्द** – गायत्री प्रगाथ।

**त्वं नो अग्ने महोभिः पाहि विश्वस्या अरातेः। उत द्विषो मर्त्यस्य ॥१॥**

हे अग्नि ! संसारसित द्वेष गर्ने व्यक्ति र शत्रुबाट हाम्रो रक्षा गर र विषम परिस्थितिमा हामीलाई धैर्यवान् बनाऊ।

**नहि मन्युः पौरुषेय ईशे हि वः प्रियजात। त्वमिदसि क्षपावान् ॥२॥**

जन्मदेखि नै प्रिय लाग्ने हे अग्निदेव ! कुनै पापीका क्रोधले तिम्रा भक्तमाथि शासन गर्न सक्दैन। तिमी रातमा पनि आलोकित हुन्छौ।

**स नो विश्वेभिर्देवेभिरूर्जो नपाद्भद्रशोचे। रयिं देहि विश्ववारम् ॥३॥**

शक्ति क्षीण हुन नदिने हे अग्निदेव ! तिमी कल्याणकारी आलोकले सम्पन्न छौ। तिमी समस्त देवताहरूद्वारा वरणीय ऐश्वर्य प्रदान गर।

**न तमग्ने अरातयो मर्तं युवन्त रायः। यं त्रायसे दाश्वांसम् ॥४॥**

हे अग्निदेव ! तिमी जुन हवि प्रदाता मानिसको संरक्षण गर्दछौ, त्यसलाई कुनै दुराचारी व्यक्तिले पनि ऐश्वर्यबाट वञ्चित गर्न सक्दैन।

**यं त्वं विप्र मेधसातावग्ने हिनोषि धनाय। स तवोती गोषु गन्ता ॥५॥**

हे ज्ञानी अग्निदेव ! तिमी जुन याजकलाई ऐश्वर्य प्रदान गर्नका लागि यज्ञकार्यमा प्रेरित गर्दछौ, उनीहरू तिम्रा संरक्षणमा गाईले युक्त हुन्छन्।

**त्वं रयिं पुरुवीरमग्ने दाशुषे मर्ताय। प्र णो नय वस्यो अच्छ ॥६॥**

हे अग्निदेव ! तिमी आहुति प्रदातालाई योद्धासँगै श्रेष्ठ ऐश्वर्य प्रदान गर्दछौ। हामीलाई पनि तिमी प्रचुर ऐश्वर्य प्रदान गर।

**उरुष्या णो मा परा दा अघायते जातवेदः। दुराध्ये३ मर्ताय ॥७॥**

समस्त पदार्थका ज्ञाता हे अग्निदेव ! हामीलाई तिमी संरक्षण प्रदान गर। हामीलाई पापी र हिंसक मानिसका अधीनमा हुन नदेऊ।

**अग्ने माकिष्टे देवस्य रातिमदेवो युयोत। त्वमीशिषे वसूनाम् ॥८॥**

हे तेजस्वी अग्निदेव ! तिमी नै समस्त ऐश्वर्यका स्वामी हौ। कुनै दुराचारी व्यक्तिले तिमीबाट प्रदान गरिएका दानबाट हामीलाई वञ्चित नगरोस्।

**स नो वस्व उप मास्यूर्जो नपान्माहिनस्य। सखे वसो जरितृभ्यः ॥९॥**

शक्तिका पुत्र र अनेकौंलाई निवास प्रदान गर्ने हे अग्निदेव ! हामी स्तुति गर्नेलाई तिमी महानताले सम्पन्न श्रेष्ठ ऐश्वर्य प्रदान गर।

**अच्छा नः शीरशोचिषं गिरो यन्तु दर्शतम्।**
**अच्छा यज्ञासो नमसा पुरूवसुं पुरुप्रशस्तमूतये ॥१०॥**

हाम्रो प्रार्थना उचित किसिमले प्रज्वलित ज्वालाले सुशोभित र दर्शनयोग्य अग्निदेवका साथ सजिलै लैजाऊ। हाम्रो रक्षाका लागि घिउयुक्त हविले सम्पन्न यज्ञ, प्रचुर सम्पदा र अति प्रशंसनीय अग्निदेवलाई प्राप्त होस्।

**अग्निं सूनुं सहसो जातवेदसं दानाय वार्याणाम्।**
**द्विता यो भूदमृतो मर्त्येष्वा होता मन्द्रतमो विशि ॥११॥**

हामी दान प्राप्तिका कामनाले बलका पुत्र, जातवेदा अग्निदेवलाई आह्वान गर्दछौं। उनी दुई रूप भएका, मरणशील प्रजाका माझ होता र अमर देवताका माझमा आनन्दका रूप हुन्।

**अग्निं वो देवयज्ययाग्निं प्रयत्यध्वरे।**
**अग्निं धीषु प्रथममग्निमर्वत्यग्निं क्षैत्राय साधसे ॥१२॥**

हे याजक हो ! यज्ञका लागि हामी अग्निदेवको प्रार्थना गर्दछौं। यज्ञाग्नि प्रदीप्त हुँदा समस्त विवेकपूर्ण कार्यमा संलग्न रहँदै र क्षेत्रीय लाभका लागि सर्वप्रथम अग्निदेवलाई नै हामी उपासना गर्दछौं।

अग्निरिषां सख्ये ददातु न ईशे यो वार्याणाम्।
अग्निं तोके तनये शश्वदीमहे वसुं सन्तं तनूपाम् ॥१३॥

अविनाशी अग्निदेव समस्त प्राणीलाई पालन गर्ने र सबैका अन्तःकरणमा निवास गर्ने हुन्। उनी श्रेष्ठ ऐश्वर्यका अधिष्ठाता र हाम्रा सखा हुन्। हामी आफ्ना सन्तानका निम्ति उनीसित प्रचुर ऐश्वर्य एवं अन्नको कामना गर्दछौं।

अग्निमीडिष्वावसे गाथाभिः शीरशोचिषम्।
अग्निं राये पुरुमीळ्ह श्रुतं नरोऽग्निं सुदीतये छर्दिः ॥१४॥

हे स्तोता हो ! विस्तृत एवं विकराल ज्वाला भएका अग्निदेवको स्तुति गर। उद्‌गाताले उनै प्रसिद्ध अग्निदेवसित धन र प्रकाशयुक्त आवास प्राप्तिका लागि प्रार्थना गरुन्।

अग्निं द्वेषो योतवै नो गृणीमस्यग्निं शं योश्च दातवे।
विश्वासु विक्ष्ववितेव हव्यो भुवद्वस्तुर्ऋषूणाम् ॥१५॥

अग्निदेव शासकजस्तै भएर सम्पूर्ण प्रजाका संरक्षक तथा ऋषिलाई निवास प्रदान गर्दछन्। आफ्ना शत्रु पर हटाउन, हर्ष एवं अभय प्राप्त गर्नका लागि हामी उनै स्तुत्य अग्निदेवको साधना गर्दछौं।

[सूक्त - ७२]

ऋषि - हर्यत प्रागाथ। देवता - अग्नी हवि स्तुति। छन्द - गायत्री।

हविष्कृणुध्वमा गमदध्वर्युर्वनते पुनः। विद्वाँ अस्य प्रशासनम् ॥१॥

हे याजक हो ! तिमीहरू सबैले आहुति प्रदान गर, अग्निदेव प्रकट भएका छन्। आहुति प्रदान गर्नमा कुशल यो याजक बारम्बार आहुति प्रदान गर्दछन्।

नि तिग्ममभ्यं१ शुं सीदद्धोता मनावधि। जुषाणो अस्य सख्यम् ॥२॥

तीखो लप्का हुने अग्निदेवनजिकै बस्ने याजकको अग्निदेवसित मित्रवत् सम्बन्ध छ।

अन्तरिच्छन्ति तं जने रुद्रं परो मनीषया। गृभ्णन्ति जिह्वया ससम् ॥३॥

याजकहरू रुद्रजस्ता अग्निदेवलाई प्रतिष्ठित गर्ने विचार गर्दछन्। उनीहरू सुषुप्त अग्निलाई आफ्ना जिब्राले प्रदीप्त गर्छन्।

जाम्यतीतपे धनुर्वयोधा अरुहद्वनम्। दृषदं जिह्वयावधीत् ॥४॥

अन्न प्रदान गर्ने अग्निदेव प्रदीप्त भएर अन्तरिक्षको अतिक्रमण गर्दै जान्छन्। उनी वनको समूह वा जलको समूहमा पनि आरुढ हुन्छन्। उनी आफ्ना जिब्रोरूपी लप्काले मेघलाई विदीर्ण गराउँछन्।

चरन्वत्सो रुशन्निह निदातारं न विन्दते। वेति स्तोतव अम्ब्यम् ॥५॥

बालकझैं उफ्रने अग्निदेव जाज्वल्यमान भएर प्रार्थना गर्ने स्तोताको कामना गर्दछन्। निन्दा गर्ने कुनै पनि व्यक्तिले उनलाई प्राप्त गर्न सक्दैन।

उतो न्वस्य यन्महदश्वावद्योजनं बृहत्। दामा रथस्य ददृशे ॥६॥

अग्निदेवको महिमामय र विशाल रथ अश्वसम्पन्न छ। त्यस रथको लगाम पनि देखिन थालेका छन्।

दुहन्ति सप्तैकामुप द्वा पञ्च सृजतः। तीर्थे सिन्धोरधि स्वरे ॥७॥

सिन्धुका किनारमा, स्वप्रकाशित तीर्थमा, सात बटाले एउटाको दोहन गर्दछन्। उनमध्ये दुईले पाँचलाई प्रेरित गरेका छन्।

आ दशभिर्विवस्वत इन्द्रः कोशमचुच्यवीत्। खेदया त्रिवृता दिवः ॥८॥

अग्निदेव दस विवस्वत्‌हरू र तीन किसिमका दीप्तिद्वारा दिव्य कोष विदीर्ण गर्दछन्।

परि त्रिधातुरध्वरं जूर्णिरेति नवीयसी। मध्वा होतारो अञ्जते ॥९॥

तीन रङ्ग भएका द्रुतगामी अग्निदेव, आफ्ना नौला ज्वालाद्वारा यज्ञतर्फ गमन गर्दछन्। होताहरू उनलाई घिउका हविले सेचन गर्दछन्।

सिञ्चन्ति नमसावतमुच्चाचक्रं परिज्मानम्। नीचीनबारमक्षितम् ॥१०॥

चक्र माथितिर अडिएको छ। चारै तिरबाट तल झुक्दा पनि जसको तल्लो ढोका खिइँदैन त्यस्ता महानलाई नमस्कार गर्दै यज्ञकर्ताले हवन गर्दछन्।

अभ्यारमिदद्रयो निषिक्तं पुष्करे मधु। अवतस्य विसर्जने ॥११॥
सम्मानित अध्वर्यु यज्ञनिर आए, त्यौंको मधुर सोमरस महावीरलाई विसर्जन गर्ने अवसर स्थापित गर्दछन्।

गाव उपावताषतं मही यज्ञस्य रप्सुदा। उभा कर्णा हिरण्यया ॥१२॥
सूर्यरश्मि यज्ञका लागि आऊन्, तिनले पृथ्वीलाई यज्ञीय रूप प्रदान गर्दछन्। तिनका दुवै किनारा चम्किला छन्।

आ सुते सिञ्चत श्रियं रोदस्योरभिश्रियम्। रसा दधीत वृषभम् ॥१३॥
हे अध्वर्यु हो ! आकाश र पृथ्वीमा देदीप्यमान दुधजस्तै सोमको मिश्रण बनाओ। पछि त्यसै दुधले बलशाली सोमलाई आत्मसात् गर्नेछ।

ते जानत स्वमोक्यं सं वत्सासो न मातृभिः। मिथो नसन्त जामिभिः ॥१४॥
गाईले आफ्नो ठाउँ चिनेका छन्। भिडमा पनि बाछाले आफ्नो माउ चिनेर पछ्याएझैं यी गाई आफ्ना बन्धुकहाँ पुग्दछन्।

उप स्रक्वेषु बप्सतः कृण्वते धरुणं दिवि। इन्द्रे अग्ना नमः स्वः ॥१५
भक्षण गर्ने ज्वालाबाट प्राप्त अन्न र दुध इन्द्रदेव र अग्निदेव यज्ञद्वारा आकाशमा छर्छन्। त्यसपछि इन्द्रदेव र अग्निदेवलाई पनि सबैले दुध प्रदान गर्दछन्।

अधुक्षत्पिप्युषीमिषमूर्जं सप्तपदीमरिः। सूर्यस्य सप्त रश्मिभिः ॥१६॥
सात रश्मिले पुष्ट भएका अन्न र रसको दोहन सातै पदयुक्त संयोगमा वायुले गरे।

सोमस्य मित्रावरुणोदिता सूर आ ददे। तदातुरस्य भेषजम् ॥१७॥
हे मित्र र वरुणदेव ! सूर्योदयका समयमा शक्तिदायक सोमरस हामी प्राप्त गर्दछौँ। किनभने त्यो रोगीका लागि औषधिजस्तै हो।

उतो न्वस्य यत्पदं हर्यतस्य निधान्यम्। परि द्यां जिह्वयातनत् ॥१८॥
आलोकवान् अग्निदेव आफ्ना निर्धारित स्थानमा आसीन भएर आफ्नो ज्वाला सम्पूर्ण अन्तरिक्षमा फैलाउँछन्।

[सूक्त - ७३]

ऋषि - गोपवन आत्रेय सप्तवध्रि। देवता - अश्विनीकुमार। छन्द - गायत्री।

उदीराथामृतायते युञ्जाथामश्विना रथम्। अन्ति षद्भूतु वामवः ॥१॥
हे अश्विनीकुमार हो ! रथ जुटाएर सुगम मार्गबाट आओ। हामीलाई सधैँ संरक्षण गर।

निमिषश्चिज्जवीयसा रथेना यातमश्विना। अन्ति षद्भूतु वामवः ॥२॥
हे अश्विनीकुमार हो ! अत्यन्त द्रुतगामी रथमा आओ। हामीलाई सधैँ संरक्षण गर।

उप स्तृणीतमत्रये हिमेन घर्ममश्विना। अन्ति षद्भूतु वामवः ॥३॥
हे अश्विनीकुमार हो ! अत्रि ऋषिका निम्ति अग्निदेवको ज्वलनशीलता हिउँले रोक। हामीलाई सधैँ तिमीहरूको संरक्षण रहोस्।

कुह स्थः कुह जग्मथुः कुह श्येनेव पेतथुः। अन्ति षद्भूतु वामवः ॥४॥
हे अश्विनीकुमार हो ! तिमीहरू कहाँ बस्दछौ ? कता गएका थियौ ? बाज पक्षीझैँ कताबाट आउँदै छौ ? हामीलाई सधैँ तिमीहरूको संरक्षण रहोस्।

यदद्य कर्हि कर्हि चिच्छुश्रूयातमिमं हवम्। अन्ति षद्भूतु वामवः ॥५॥
हे अश्विनीकुमार हो ! तिमीहरू चाहेँ जहाँसुकै होओ, हाम्रो पुकार सुन र हामीलाई सधैँ तिमीहरू संरक्षण गर।

अश्विना यामहूतमा नेदिष्ठं याम्याप्यम्। अन्ति षद्भूतु वामवः ॥६॥
आह्वान गर्न योग्य दुवै अश्विनीकुमारलाई आत्मीय मित्र मानेर हामी नजिक जान्छौँ। उनीहरूको संरक्षण हामीलाई सधैँ प्राप्त होस्।

अवन्तमत्रये गृहं कृणुतं युवमश्विना। अन्ति षद्भूतु वामवः ॥७॥
हे अश्विनीकुमार हो ! अत्रि ऋषिका निमित्त तिमीहरूले संरक्षणयुक्त आवास बनायौ। त्यसैले हामीलाई सधैँ तिमीहरूको संरक्षण प्राप्त होस्।

वरेथे अग्निमातपो वदते वल्ग्वत्रये। अन्ति षद्भूतु वामवः ॥८॥
हे अश्विनीकुमार हो ! श्रेष्ठ वाणीले स्तोत्र उच्चारण गर्ने अत्रि ऋषिलाई तिमीहरू अग्निका ज्वलनशीलताबाट सुरक्षित गर। हामीलाई सधैं तिमीहरू संरक्षण गर।

प्र सप्तवध्रिराशसा धारामग्नेरशायत। अन्ति षद्भूतु वामवः ॥९॥
हे अश्विनीकुमार हो ! सप्तवध्रिलाई नियोजित गरेका सूर्यदेवले आशा लाग्दो स्तोत्रबाट प्रेरित भएर अग्निको ज्वाला मञ्जुषाबाट बाहिर निकाल्दै धर्तीमा फिँजाए। हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

इहा गतं वृषण्वसू शृणुतं म इमं हवम्। अन्ति षद्भूतु वामवः ॥१०॥
हे ऐश्वर्य वर्षा गराउने अश्विनीकुमार हो ! स्तुति सुनेर हाम्रा नजिकै आओ। हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

किमिदं वां पुराणवज्जरतोरिव शस्यते। अन्ति षद्भूतु वामवः ॥११॥
हे अश्विनीकुमार हो ! वृद्ध पुरुषझैं तिमीहरूलाई बारम्बार किन बोलाउनु पर्दछ ? हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

समानं वां सजात्यं समानो बन्धुरश्विना। अन्ति षद्भूतु वामवः ॥१२॥
हे अश्विनीकुमार हो ! तिमीहरू दुवैको उत्पत्ति एकै किसिमले भएको र भ्रातृत्व भाव पनि उस्तै छ। हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

यो वां रजांस्यश्विना रथो वियाति रोदसी। अन्ति षद्भूतु वामवः ॥१३॥
हे अश्विनीकुमार हो ! तिमीहरूको रथ धर्ती, आकाश र अन्य भुवन कटेर जान्छ। हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

आ नो गव्येभिरश्व्यैः सहस्रैरुप गच्छतम्। अन्ति षद्भूतु वामवः ॥१४॥
हे अश्विनीकुमार हो ! हजारौं अश्व र गाईका समूहसँगै हाम्रा नजिक आओ। हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

मा नो गव्येभिरश्व्यैः सहस्रेभिरति ख्यतम्। अन्ति षद्भूतु वामवः ॥१५॥
हे अश्विनीकुमार हो ! हजारौं अश्व र गाईका समूहले हामीलाई वञ्चित नगर। हामीलाई सधैं तिमीहरूको संरक्षण प्राप्त होस्।

अरुणप्सुरुषा अभूदकर्ज्योतिर्ऋतावरी। अन्ति षद्भूतु वामवः ॥१६॥
हे अश्विनीकुमार हो ! बिहानको अरुणोदयमा आकाश लालिमायुक्त भएको छ र यज्ञसँगै आलोक पनि प्रसारित हुँदै छ। हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

अश्विना सु विचाकशद्वृक्षं परशुमाँ इव। अन्ति षद्भूतु वामवः ॥१७॥
हे अश्विनीकुमार हो ! बन्चरो लिएका मानिसले रुख काटेझैं आलोकवान् सूर्यदेव अन्धकार नष्ट गर्दै उदाए। हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

पुरं न धृष्णवा रुज कृष्णया बाधितो विशा। अन्ति षद्भूतु वामवः ॥१८॥
हे अश्विनीकुमार हो ! इन्द्रदेवले दुष्कर्मीको सहर उजाडेझैं तिमीहरू ती कालो कर्म विनाश गर। हामीलाई सधैं तिमीहरूको संरक्षण रहोस्।

[सूक्त – ७४]

ऋषि – गोपवन आत्रेय। देवता – अग्नि श्रुतर्वा आर्क्ष्य। छन्द – गायत्री अनुष्टुप्।

विशोविशो वो अतिथिं वाजयन्तः पुरुप्रियम्।
अग्निं वो दुर्यं वचः स्तुषे शूषस्य मन्मभिः ॥१॥
अन्न र बल चाहने हे मानिस हो ! सर्वप्रिय र सर्वपूज्य अग्निदेवको स्तुति गर। हामी पनि यी अग्निदेवलाई सुखदायक स्तोत्रले स्तुति गर्दछौं।

यं जनासो हविष्मन्तो मित्रं न सर्पिरासुतिम्। प्रशंसन्ति प्रशस्तिभिः ॥२॥
हविदाता मित्रले जस्तै घिउ यज्ञ सम्पन्न गर्दै वैदिक स्तोत्रले अग्निदेवको स्तवन गरौं।

पन्यांसं जातवेदसं यो देवतात्युद्यता। हव्यान्यैरयद्दिवि ॥३॥
स्तुत्य, सर्वज्ञानयुक्त अग्निदेवलाई हामी प्रशंसा गर्दछौं। अग्निदेव यज्ञमा प्रदान गरेको हविष्यान्न देवलोकसम्म पुऱ्याउन सहायता गर्दछन्।

**आगन्म वृत्रहन्तमं ज्येष्ठमग्निमानवम्। यस्य श्रुतर्वा बृहन्नार्क्षो अनीक एधते॥**
ऋक्षपुत्र श्रुतर्वाका लागि प्रचण्ड ज्वालाजस्ता, वृत्रसंहारक, श्रेष्ठ मानिसका हितकारी अग्निदेवलाई हामी वरण गर्दछौं।

**अमृतं जातवेदसं तिरस्तमांसि दर्शतम्। घृताहवनमीड्यम्॥५॥**
अविनाशी अग्निदेव समस्त पदार्थका ज्ञाता र अन्धकार नष्ट गरेर देखिन्छन्। घिउले आहुति दिन योग्य हुनाले हामी स्तुति गर्दछौं।

**सबाधो यं जना इमे३ऽग्निं हव्येभिरीडते। जुह्वानासो यतस्रुचः॥६॥**
कामना गर्ने याजकहरू यज्ञमा स्रुवा लिएर अग्निदेवलाई आहुति समर्पित गर्दछन्, हामी पनि उनैको स्तुति गर्दछौं।

**इयं ते नव्यसी मतिरग्ने अधाय्यस्मदा। मन्द्र सुजात सुक्रतोऽमूर दस्मातिथे॥**
दर्शनीय र अतिथिजस्तै वन्दनीय हे अग्निदेव ! तिमी अत्यन्त प्रज्ञावान्, हर्षदायक र सत्कर्म गर्ने हौ। तिम्रो प्रशंसनीय मेधा हामीभित्र स्थापित होस्।

**सा ते अग्ने शन्तमा चनिष्ठा भवतु प्रिया। तया वर्धस्व सुष्टुतः॥८॥**
हे अग्निदेव ! हामीले सम्पन्न गरेको प्रार्थना तिम्रा लागि हर्षदायक, अन्नदायक र प्रिय होस्। त्यो ग्रहण गरेर तिमी समृद्ध होऊ।

**सा द्युम्नैर्द्युम्निनी बृहदुपोप श्रवसि श्रवः। दधीत वृत्रतूर्ये॥९॥**
हे अग्निदेव ! तिमी हाम्रो तेजस्वी प्रार्थना ग्रहण गरेर हामीलाई सङ्ग्राममा शत्रु परास्त गर्ने श्रेष्ठ कीर्ति प्राप्त गर्न सक्ने शक्ति प्रदान गर।

**अश्वामिद्गां रथप्रां त्वेषमिन्द्रं न सत्पतिम्।**
**यस्य श्रवांसि तूर्वथ पन्यंपन्यं च कृष्टयः॥१०॥**
अग्निदेव आफ्ना शक्तिले मानिसलाई श्रेष्ठ सम्पत्ति र अन्न प्रदान गर्दछन्, सत्पुरुषको पालन गर्ने प्रकाशमान हुने अग्निदेवलाई सबैले सेवा गर्दछन्। उनी गाई, अश्व, महारथी र इन्द्रदेवजस्तै हुन्।
**यं त्वा गोपवनो गिरा चनिष्ठदग्ने अङ्गिरः। सपावक श्रुधी हवम्॥११॥**
गोपवनका स्तुतिले प्रकट भएका, शरीरका अङ्गहरूमा सूक्ष्म रूपले विद्यमान, सबैलाई पवित्र गराउने हे अग्निदेव ! तिमी हाम्रो प्रार्थना ध्यानपूर्वक सुन।
**यं त्वा जनास ईडते सबाधो वाजसातये। स बोधि वृत्रतूर्ये॥१२॥**
हे अग्निदेव ! सामर्थ्य प्राप्त गर्नका लागि विपत्तिग्रस्त मानिस तिम्रो प्रार्थना गर्दछन्। शत्रुको संहार गर्नका लागि तिमी जागरुक होऊ।
**अहं हुवान आर्क्षे श्रुतर्वणि मदच्युति।**
**शर्धांसीव स्तुकाविनां मृक्षा शीर्षा चतुर्णाम्॥१३॥**
ऋक्षका पुत्र श्रुतर्वा शत्रुका अभिमानले नष्ट हुन लागेका छन्। उनका यज्ञमा हामीले चार अश्वका शिर भेडाको ऊनझैं सफा गरायौं।
**मां चत्वार आशवः शविष्ठस्य द्रवित्नवः।**
**सुरथासो अभि प्रयो वक्षनवयो न तुग्रयम्॥१४॥**
तुग्रका पुत्र भुज्युलाई अश्विनीकुमारका यानले उनका लक्ष्यसम्म पुऱ्याएझैं शक्तिशाली श्रुतर्वाका चार द्रुतगामी घोडा रथमा नारिएर हामीलाई गन्तव्यसम्म पुऱ्याउँछन्।
**सत्यमित्त्वा महेनदि परुष्ण्यव देदिशम्।**
**नेमापो अश्वदातरः शविष्ठादस्ति मर्त्यः॥१५॥**
हे महान् सरिता, परुष्णि र जलसमूह ! शक्तिशाली श्रुतर्वाभन्दा श्रेष्ठ अश्व दान गर्ने अरू कोही पनि छैन भनेर तिमीहरूसित हामी वास्तविक रूपले निवेदन गर्दछौं।

**[सूक्त – ७५]**

**ऋषि** – विरूप आङ्गिरस। **देवता** – अग्नि। **छन्द** – गायत्री।

**युक्ष्वा हि देवहूतमाँ अश्वाँ अग्ने रथीरिव। नि होता पूर्व्यः सदः॥१॥**
हे अग्निदेव ! देवताको आह्वान गर्ने अश्वलाई सारथीजस्तै बनेर आफ्नो रथमा नियोजित गर। सर्वप्रथम हविदाता भएर तिमी हाम्रा यज्ञको अनुष्ठानमा प्रतिष्ठित होऊ।

उत नो देव देवाँ अच्छा वोचो विदुष्टरः। श्रद्विश्वा वार्या कृधि ॥२॥
हे अग्निदेव ! देवताका बीचमा सर्वश्रेष्ठ विद्वान्‌का रूपमा हामीलाई प्रतिष्ठित गराऊ। वरणीय हव्यलाई सार्थक रूप प्रदान गर।

त्वं ह यद्यविष्ठ्य सहसः सूनवाहुत। ऋतावा यज्ञियो भुवः ॥३॥
शक्तिका पुत्र र सत्य पालन गर्ने हे यजनीय अग्निदेव ! हविद्वारा तिमी प्रदीप्त हुन्छौ।

अयमग्निः सहस्रिणो वाजस्य शतिनस्पतिः। मूर्धा कवी रयीणाम् ॥४॥
ज्ञानी अग्निदेव सयौँ वा हजारौँ किसिमका अन्न र धनका सर्वोच्च अधिष्ठाता हुन्।

तं नेमिमृभवो यथा नमस्व सहूतिभिः। नेदीयो यज्ञमङ्गिरः ॥५॥
हे आङ्गिरस् अग्निदेव ! कुशल शिल्पकारले रथ सुन्दर बनाएझैं देवताहरूसँग तिमी पनि उपस्थित भएर हाम्रो यज्ञ श्रेष्ठ र वन्दनीय बनाऊ।

तस्मै नूनमभिद्यवे वाचा विरूप नित्यया। वृष्णे चोदस्व सुष्टुतिम् ॥६॥
हे महर्षि विरूप ! तिमी अमृत वचनले शक्तिशाली र प्रखर तेजसम्पन्न अग्निदेवको प्रार्थना गर।

कमु ष्विदस्य सेनयाग्नेरपाकचक्षसः। पणिं गोषु स्तरामहे ॥७॥
सूक्ष्म दृष्टिसम्पन्न अग्निदेवको सेनाले गाई प्राप्त गर्नलाई कस्ता पणिको हनन गरोस् ?

मा नो देवानां विशः प्रस्नातीरिवोस्राः। कृशं न हासुरघ्न्याः ॥८॥
हे अग्निदेव ! दुध दिने गाईले कमजोर बाछो नत्यागेझैं तिमी पनि हामीलाई नत्याग, किनभने हामी देवताका सन्तान हौं।

मा नः समस्य दूढ्यः परिद्वेषसो अंहतिः। ऊर्मिर्न नावमा वधीत् ॥९॥
समुद्रका लहरले नौकालाई बाधा पुऱ्याएझैं विद्वेषीका दुर्बुद्धिले हामीलाई नसताओस्।

नमस्ते अग्न ओजसे गृणन्ति देव कृष्टयः। अमैरमित्रमर्दय ॥१०॥
हे दिव्य क्षमताले सम्पन्न अग्निदेव ! समस्त साधकहरू तिमीलाई नमस्कार गर्दछन्। तिमी अहितकारीको संहार गर।

कुवित्सु नो गविष्टयेऽग्ने संवेषिषो रयिम्। उरुकृदुरु णस्कृधि ॥११॥
हे अग्निदेव ! हामीलाई प्रचुर ऐश्वर्य प्रदान गर, त्यसले गाई प्राप्त गर्न सकौँ। हामीलाई तिमी समृद्ध गराऊ, किनभने तिमी उन्नति गराउने हौ।

मा नो अस्मिन्महाधने परा वर्ग्भारभृद्यथा। संवर्गं सं रयिं जय ॥१२॥
हे अग्निदेव ! थाकेको भरियाझैं हामीलाई तिमी नफ्याँक। हाम्रा लागि तिमी शत्रुको ऐश्वर्य जितिदेऊ।

अन्यमस्मद्भिया इयमग्ने सिषक्तु दुच्छुना। वर्धा नो अमवच्छवः ॥१३॥
हे अग्निदेव ! तिम्रो दुःख दिने सामर्थ्यले हामीबाहेक अरूलाई नै दुःख दियोस्। हामी तिम्रो शक्ति र वेग बढाऔँ।

यस्याजुषन्नमस्विनः शमीमदुर्मखस्य वा। तं घेदग्निर्वृधावति ॥१४॥
तिमी स्तोता र याज्ञिकको गल्ती स्वीकार गर्दछौ, तिनको बढ्दो सम्पत्ति संरक्षण गर।

परस्या अधि संवतोऽवराँ अभ्या तर। यत्राहमस्मि ताँ अव ॥१५॥
हे अग्निदेव ! तिमी शत्रुसेनाको सट्टा हाम्रो सेना विजयी बनाऊ। हामी जुन सेनासित हुन्छौं, त्यसलाई संरक्षण प्रदान गर।

विद्मा हि ते पुरा वयमग्ने पितुर्यथावसः। अधा ते सुम्नमीमहे ॥१६॥
हे अग्निदेव ! पुत्रले आफूलाई संरक्षण दिने पिताका लागि सुखको कामना गरेझैं हे रक्षक ! उहिलेदेखि नै तिमीबाट सुख पाएको जानेका छौं र त्यसकै कामना गर्दछौं।

[सूक्त - ७६]

ऋषि - कुरुसुति काण्व। देवता - इन्द्र। छन्द - गायत्री।

इमं नु मायिनं हुव इन्द्रमीशानमोजसा। मरुत्वन्तं न वृञ्जसे ॥१॥
इन्द्रदेव विवेकपूर्वक सामर्थ्यले सबैलाई नियन्त्रित गर्दछन्। उनै मरुत्वान् इन्द्रदेवलाई हामी शत्रु विनाश गर्नका लागि आह्वान गर्दछौं।

**अयमिन्द्रो मरुत्सखा वि वृत्रस्याभिनच्छिरः। वज्रेण शतपर्वणा ॥२॥**

इन्द्रदेवले मरुत्हरूसँग मिलेर सयौं पर्व भएका वज्रको प्रहारले वृत्रको शिर छिनाए।

**वावृधानो मरुत्सखेन्द्रो वि वृत्रमैरयत्। सृजन्त्समुद्रिया अपः ॥३॥**

इन्द्रदेवले मरुत्हरूका सहायताले वृत्र संहार गरेर अन्तरिक्षको जल प्रवाहित गराए।

**अयं ह येन वा इदं स्वर्मरुत्वता जितम्। इन्द्रेण सोमपीतये ॥४॥**

मरुत्हरूका सहयोगले सोमपान गर्नका लागि स्वर्गलाई जित्ने इन्द्रदेव नै हुन्।

**मरुत्वन्तमृजीषिणमोजस्वन्तं विरप्शिनम्। इन्द्रं गीर्भिर्हवामहे ॥५॥**

हामी अति ओजस्वी र महान् मरुत्वान् इन्द्रदेवलाई आफ्ना प्रार्थनाले बोलाउँछौं।

**इन्द्रं प्रत्नेन मन्मना मरुत्वन्तं हवामहे। अस्य सोमस्य पीतये ॥६॥**

मरुत्वान् इन्द्रदेवलाई हामी पुराना स्तुतिले सोमपान गर्नका लागि आह्वान गर्दछौं।

**मरुत्वाँ इन्द्र मीढ्वः पिबा सोमं शतक्रतो। अस्मिन्यज्ञे पुरुष्टुत ॥७॥**

हे हर्षको वर्षा गराउने मरुत्वान् इन्द्रदेव ! तिमी यज्ञजस्ता सयौं असल कर्म गर्छौ। त्यसैले यस यज्ञमा सोमपान गर।

**तुभ्येदिन्द्र मरुत्वते सुताः सोमासो अद्रिवः। हृदा हूयन्त उक्थिनः ॥८॥**

वज्र धारण गर्ने हे मरुत्वान् इन्द्रदेव ! तिम्रा लागि सोमरस तयार गर्ने स्तोताले श्रद्धापूर्वक अन्तःकरणमा तिमीलाई नै आह्वान गर्दछन्।

**पिबेदिन्द्र मरुत्सखा सुतं सोमं दिविष्टिषु। वज्रं शिशान ओजसा ॥९॥**

मरुत्हरूका सखा हे इन्द्रदेव ! हाम्रा स्वर्गप्रदायक यज्ञमा सोमपान गरेर आफ्ना शक्तिले वज्रको धार तिखो गर।

**उत्तिष्ठन्नोजसा सह पीत्वी शिप्रे अवेपयः। सोममिन्द्र चमू सुतम् ॥१०॥**

हे इन्द्रदेव ! पात्रमा राखेको सोमरस लिएर सामर्थ्यशाली भई उठ र च्यापु हल्लाऊ।

**अनु त्वा रोदसी उभे क्रक्षमाणमकृपेताम्। इन्द्र यद्दस्युहाभवः ॥११॥**

शत्रुप्रति प्रतिस्पर्धी भाव राख्ने इन्द्रदेवले शत्रु नाश गर्दा द्युलोक र पृथ्वीलोक दुवैले आनन्द प्राप्त गर्दछन्।

**वाचमष्टापदीमहं नवस्रक्तिमृतस्पृशम्। इन्द्रात् परि तन्वं ममे ॥१२॥**

हे इन्द्रदेव ! सत्य बढाउने, नौलो रचना र आठ पदयुक्त छोटो स्तुति हामी गर्दछौं।

**[सूक्त – ७७]**

**ऋषि** – कुरुसुति काण्व। **देवता** – इन्द्र। **छन्द** – गायत्री प्रगाथ।

**जज्ञानो नु शतक्रतुर्वि पृच्छदिति मातरम्। क उग्राः के ह शृण्विरे ॥१॥**

उत्पन्न हुनासाथ शतक्रतुले मातासित सबैभन्दा विख्यात योद्धा को हो भनेर सोधे।

**आदीं शवस्यब्रवीदौर्णवाभमहीशुवम्। ते पुत्र सन्तु निष्टुरः ॥२॥**

शक्तिशाली माताले हे वत्स ! और्णनाभ र अहीशुव नामका राक्षस छन्, तिनको वध तिमीबाट हुनुपर्दछ भन्ने जवाफ दिइन्।

**समित्तान्वृत्रहाखिदत्खे अराँ इव खेदया। प्रवृद्धो दस्युहाभवत् ॥३॥**

वृत्रहन्ता इन्द्रदेवले रथको अर बाँधेझैं राक्षसलाई डोरीले कसेर बाँधे। दस्युको विनाश गर्ने इन्द्रदेवले आफ्नो विस्तार गरे।

**एकया प्रतिधापिबत्साकं सरांसि त्रिंशतम्। इन्द्र सोमस्य काणुका ॥४॥**

उनै इन्द्रदेवले सोमरसले परिपूर्ण भएका तीस भाँडा एकै पटक पान गरे।

**अभि गन्धर्वमतृणदबुध्नेषु रजःस्वा। इन्द्रो ब्रह्मभ्य इद्वृधे ॥५॥**

इन्द्रदेवले विद्वान्हरूलाई समृद्ध गर्नका लागि आकाशमा रहेको आधाररहित मेघलाई विदीर्ण गराए।

**निराविध्यद् गिरिभ्य आ धारयत्पक्वमोदनम्। इन्द्रो बुन्दं स्वाततम् ॥६॥**

इन्द्रदेवले अस्त्रले मेघलाई नष्ट गरेर जल प्रवाहित गराए। यसै किसिमले पृथ्वीमा परिपक्व अन्न धारण गराए।

शतब्रध्न इषुस्तव सहस्रपर्ण एक इत्। यमिन्द्र चकृषे युजम् ॥७॥
हे इन्द्रदेव ! धनुषमा चढाइने बाण एउटै छ, त्यसमा सयौं फल र हजारौं प्वाँख छन्।

तेन स्तोतृभ्य आ भर नृभ्यो नारिभ्यो अत्तवे। सद्यो जात ऋभुष्ठिर ॥८॥
युद्धमा अविचल रहने हे इन्द्रदेव ! चाँडै प्रकट भएर तिमी त्यस बाणका सहायताले पुरुष, नारी स्तुति गर्नेहरूका लागि प्रचुर अन्न प्रदान गर।

एता च्यौत्नानि ते कृता वर्षिष्ठानि परीणसा। हृदा वीड्वधारयः ॥९॥
हे इन्द्रदेव ! तिमी सेनालाई आफ्ना अविचल र मृदुल अन्तःकरणले धारण गर, किनभने यिनीहरू तिमीबाट सङ्गठित गरिएका छन्।

विश्वेत्ता विष्णुराभरदुरुक्रमस्त्वेषितः।
शतं महिषान्क्षीरपाकमोदनं वराहमिन्द्र एमुषम् ॥१०॥
हे इन्द्रदेव ! तिमीबाट प्रेरणा पाएर बलशाली विष्णुदेव सयौं सामर्थ्यवान् गोरु, जलले भरिएको मेघ, परिपक्व क्षीर र समस्त पदार्थ प्रदान गर्दछन्।

तुविक्षं ते सुकृतं सूमयं धनुः साधुर्बुन्दो हिरण्ययः।
उभा ते बाहू रण्या सुसंस्कृत ऋदूपे चिदृदूवृधा ॥११॥
हे इन्द्रदेव ! तिम्रो बाण सुनले बनेको छ र तिम्रा दुवै बाहु शत्रु विनाशक तथा यज्ञलाई समृद्ध गराउने खालका छन्। तिम्रो धनुष अनेकौं बाण छोड्दछ र राम्रो किसिमले बनाएको हुनाले अत्यधिक आनन्ददायी छ।

[सूक्त - ७८]

ऋषि - कुरुसुति काण्व। देवता - इन्द्र। छन्द - गायत्री बृहति।

पुरोडाशं नो अन्धस इन्द्र सहस्रमा भर। शता च शूर गोनाम् ॥१॥
हे शूरवीर इन्द्रदेव ! तिमी सयौं गाईको बथान, सोमरस र श्रेष्ठ आहारका रूपमा हजारौं पुरोडाश हामीलाई प्रदान गर।

आ नो भर व्यञ्जनं गामश्वमभ्यञ्जनम्। सचा मना हिरण्यया ॥२॥
हे इन्द्रदेव ! हामीलाई सुसंस्कृत व्यञ्जन, गाई, अश्व, तेल र स्वर्णिम आभूषण दान गर।

उत नः कर्णशोभना पुरूणि धृष्णवा भर। त्वं हि शृण्विषे वसो ॥३॥
श्रेष्ठ धनले सम्पन्न, उदार हे इन्द्रदेव ! हामीलाई कान आदिमा लगाउने गहना दान गर।

नकीं वृधीक इन्द्र ते न सुषा न सुदा उत। नान्यस्त्वच्छूर वाघतः ॥४॥
हे शूरवीर इन्द्रदेव ! तिमी सबैभन्दा महान् छौ। सबैलाई ऐश्वर्य आदि प्रदान गर्दछौ। याजकलाई नेतृत्व गर्ने पनि तिमीबाहेक अर्को कोही छैन।

नकीमिन्द्रो निकर्तवे न शक्रः परिशक्तवे। विश्वं शृणोति पश्यति ॥५॥
बलशाली इन्द्रदेवलाई कसैले परास्त गर्न सक्दैन र कसैले नष्ट गर्न पनि सक्दैन। उनी समस्त पदार्थ देख्नेजान्ने हुन्।

स मन्युं मर्त्यानामदब्धो नि चिकीषते। पुरा निदश्चिकीषते ॥६॥
कुनै पनि व्यक्तिबाट पराजित नहुने इन्द्रदेव पापीका निकृष्ट क्रोधको निन्दा गर्नुभन्दा पहिले उसैलाई शान्त गराइदिन्छन्।

क्रत्व इत्पूर्णमुदरं तुरस्यास्ति विधतः। वृत्रघ्नः सोमपाव्नः ॥७॥
कर्मशील इन्द्रदेव वृत्रलाई संहार गर्दछन्। सोमरस पान गर्ने इन्द्रदेव मानिसको इच्छा तुरुन्तै पूरा गराउँछन्। इन्द्रदेवको पेट निश्चित रूपले परिपूर्ण भएको छ।

त्वे वसूनि सङ्गता विश्वा च सोम सौभगा। सुदात्वपरिह्वता ॥८॥
हे इन्द्रदेव ! कपटरहित श्रेष्ठ ऐश्वर्य तथा समस्त सौभाग्य तिमीसितै सम्बन्धित छन्।

त्वामिद्यवयुर्मम कामो गव्युर्हिरण्ययुः। त्वामश्वयुरेषते ॥९॥
हे इन्द्रदेव ! अन्न, स्वर्ण, गाई र अश्वको कामना गर्ने हाम्रो मन तिम्रै उपासना गर्दछ।

तवेदिन्द्राहमाशसा हस्ते दात्रं चना ददे।
दिनस्य वा मघवन्त्सम्भृतस्य वा पूर्धि यवस्य काशिना ॥१०॥
हे ऐश्वर्यसम्पन्न इन्द्रदेव ! तिम्रै आश्रयमा हामी आफ्ना हातले हँसिया समाउँछौं। हामीले उब्जाएका जौका मुठीले हाम्रो भण्डार भरिदेऊ।

[सूक्त – ७९]

ऋषि – कृत्नु भार्गव। देवता – सोम। छन्द – गायत्री अनुष्टुप्।
अयं कृत्नुरगृभीतो विश्वजिदुद्भिदित्सोमः। ऋषिर्विप्रः काव्येन ॥१॥
कर्मको कर्ता, सबैलाई जित्ने, अरूले ग्रहण नगर्ने र विश्वजित् भएर उद्भिद नामको सोमयज्ञ सम्पन्न गराउने यही सोम हो। विद्वान् ऋषिका काव्यले यो स्तुत्य छ।

अभ्यूर्णोति यन्नग्नं भिषक्ति विश्वं यत्तुरम्। प्रेमन्धः ख्यन्निः श्रोणो भूत् ॥२॥
वस्त्रविहीनलाई लाउन दिने, रोगीको उपचार गर्ने अन्धालाई दृष्टि प्रदान गर्ने र लङ्गडालाई गति प्रदान गर्ने यही सोम हो।

त्वं सोम तनूकृद्भ्यो द्वेषोभ्योऽन्यकृतेभ्यः। उरु यन्तासि वरूथम् ॥३॥
हे सोमदेव ! तिमी शरीर कमजोर गराउने रोगरूपी शत्रुबाट सुरक्षा गर्नका लागि श्रेष्ठ कवचजस्तै हौ।

त्वं चित्ती तव दक्षैर्दिव आ पृथिव्या ऋजीषिन्। यावीरघस्य चिद् द्वेषः ॥४॥
हे सोझो गति भएका सोमदेव ! तिमी आफ्ना विवेक र कुशलताले हाम्रा विनाशकारी शत्रुलाई द्यावापृथिवीदेखि पर भगाऊ।

अर्थिनो यन्ति चेदर्थं गच्छानिद्दुषो रातिम्। ववृज्युस्तृष्यतः कामम् ॥५॥
ऐश्वर्यको कामना गर्नेहरू ऐश्वर्य प्रदातासित गएर आफ्नो आकाङ्क्षा पूरा गराउँछन्।

विदद्यत्पूर्व्यं नष्टमुदीमृतायुमीरयत्। प्रेमायुस्तारीदतीर्णम् ॥६॥
नष्ट भएको पुरानो सम्पत्ति व्यक्तिले प्राप्त गरेपछि त्यस धनले उसलाई यज्ञ गर्न प्रेरित गर्दछ। त्यसो भएपछि दीर्घायु प्राप्त हुन्छ।

सुशेवो नो मृळयाकुरदृप्तक्रतुरवातः। भवा नः सोम शं हृदे ॥७॥
हे सोमदेव ! तिमी हाम्रो हृदयका लागि हर्षकारी र उन्माद हटाउने हौ। तिमी हाम्रो वात आदि रोग हटाएर हामीलाई शान्ति प्रदान गर।

मा नः सोम सं वीविजो मा वि बीभिषथा राजन्। मा नो हार्दि त्विषा वधीः ॥
हे ओजस्वी सोमदेव ! तिम्रा ओजले हामीलाई प्रकम्पित र भयाक्रान्त नगर। हाम्रो अन्तःकरणलाई पीडित नगराऊ।

अव यत्स्वे सधस्थे देवानां दुर्मतीरीक्षे।
राजन्नप द्विषः सेध मीढ्वो अप स्निधः सेध ॥९॥
हर्ष प्रदायक र तेजस्वी हे सोमदेव ! हाम्रा घरमा देवताको अभिशाप नआओस्। तिमी हाम्रा शत्रु र हिंसा गर्ने मानिसलाई देख्नेबित्तिकै पर भगाइदेऊ।

[सूक्त – ८०]

ऋषि – एकद्यु नौधस। देवता – इन्द्र देवगण। छन्द – गायत्री त्रिष्टुप्।
नह्यन्यं बळाकरं मर्डितारं शतक्रतो त्वं न इन्द्र मृळय ॥१॥
हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! तिम्रा अतिरिक्त कसैले सुख दिन्छन् भनी हामीले मानेका छैनौं। त्यसैले हामीलाई सुख प्रदान गर।

यो नः शश्वत्पुराविथामृध्रो वाजसातये। स त्वं न इन्द्र मृळय ॥२॥
हे अहिंसित इन्द्रदेव ! उहिले अन्न प्राप्त गर्नका लागि हामीलाई संरक्षित गरेका थियौ। अब हामीलाई सबै किसिमका सुख प्रदान गर।

किमङ्ग रध्रचोदनः सुन्वानस्यावितेदसि। कुवित्स्विन्द्र णः शकः ॥३॥
हे इन्द्रदेव ! तिमी धन दातालाई प्रेरणा दिन्छौ र याज्ञिकका संरक्षक हौ। त्यसैले हामीलाई प्रचुर ऐश्वर्य प्रदान गर।

इन्द्र प्र णो रथमव पश्चाच्चित्सन्तमद्रिवः। पुरस्तादेनं मे कृधि ॥४॥
वज्र धारण गर्ने हे इन्द्रदेव ! पछि परेको हाम्रो रथ तिमी जोगाऊ र अगाडि लैजाऊ।

हन्तो नु किमाससे प्रथमं नो रथं कृधि। उपमं वाजयु श्रवः ॥५॥
शत्रुको संहार गर्ने हे इन्द्रदेव ! तिमी किन चुप लागेका ? हाम्रो रथ तिमी सबैभन्दा अगाडि पारिदेऊ। किनभने शक्ति प्रदान गर्ने अन्न तिमीसित विद्यमान छ।

अवा नो वाजयुं रथं सुकरं ते किमित्परि। अस्मान्त्सु जिग्युषस्कृधि ॥६॥
हे इन्द्रदेव ! तिम्रा लागि जुनसुकै काम सजिलै छन्। अन्नले सम्पन्न हाम्रा रथलाई तिमी संरक्षण गर र सङ्ग्राममा विजयी बनाऊ।

इन्द्र दृह्यस्व पूरसि भद्रा त एति निष्कृतम्। इयं धीर्ऋत्वियावती ॥७॥
हे इन्द्रदेव ! इच्छा पूरा गराउने हुनाले तिमी समृद्ध छौ। तिमी यज्ञकर्म सम्पन्न गराउँछौ। हाम्रो हितकारी स्तुति तिम्रा लागि गरिएका सत्कर्मतर्फ गमन गर्दछ।

मा सीमवद्य आ भागुर्वी काष्ठा हितं धनम्। अपावृक्ता अरत्नयः ॥८॥
मन नपर्ने शत्रु हाम्रा नजिक नआओस्। विराट् रणक्षेत्रमा विद्यमान ऐश्वर्य इन्द्रदेवले निन्दकलाई नबाँडून्।

तुरीयं नाम यज्ञियं यदा करस्तदुश्मसि। आदित्पतिर्न ओहसे ॥९॥
हे इन्द्रदेव ! हामी तिम्रा यज्ञसम्बन्धी चौथा नामको कामना गर्दछौँ। त्यसलाई तिमीले आफैं निर्धारित गरेका थियौ। तिमी यसै यज्ञका रूपमा सबैलाई ऐश्वर्य प्रदान गर्दछौ।

अवीवृधद्वो अमृता अमन्दीदेकद्यूर्देवा उत याश्च देवीः।
तस्मा उ राधः कृणुत प्रशस्तं प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥१०॥
हे देवीदेवता हो ! स्तुतिपूर्वक सोम समर्पित गरेर हामी एकद्यू ऋषिहरू तिमीलाई तृप्त गराउँछौँ र महानता वृद्धि गर्दछौँ। हामीलाई उत्तम धन प्रदान गर। विवेकद्वारा ऐश्वर्य प्रदान गर्ने इन्द्रदेव उषा कालमा आऊन्।

[सूक्त – ८१]

ऋषि – कुसीदी काण्व। देवता – इन्द्र। छन्द – गायत्री।

आ तू न इन्द्र क्षुमन्तं चित्रं ग्राभं सं गृभाय। महाहस्ती दक्षिणेन ॥१॥
महान् भुजा भएका हे इन्द्रदेव ! हामीलाई न्यायले उपार्जन गरिएको, प्रशंसनीय ऐश्वर्य दाहिने हातले प्रदान गर।

विद्मा हि त्वा तुविकूर्मिं तुविदेष्णं तुवीमघम्। तुविमात्रमवोभिः ॥२॥
हे इन्द्रदेव ! तिमीलाई ऐश्वर्यशाली, बहुमुखी पराक्रम प्रकट गर्ने, व्यापक आकारयुक्त, संरक्षणकर्ताका रूपमा हामी चिन्छौँ।

नहि त्वा शूर देवा न मर्तासो दित्सन्तम्। भीमं न गां वारयन्ते ॥३॥
हे पराक्रमी इन्द्रदेव ! तिमी बलशाली साँढेजस्तै छौ। दान दिन लाग्दा तिमीलाई देवता या मानिस कसैले हल्लाउन सक्दैन।

एतो न्विन्द्रं स्तवामेशानं वस्वः स्वराजम्। न राधसा मर्धिषन्नः ॥४॥
हे स्तोता हो ! ऐश्वर्यका स्वामी र स्वयं प्रकाशित हुने इन्द्रदेवलाई हामी यहाँ उपस्थित भएर प्रार्थना गरौँ। त्यसो हुँदा ऐश्वर्यका क्षेत्रमा हाम्रो प्रतिस्पर्धा गर्ने कोही हुनेछैन।

प्र स्तोषदुप गासिषच्छ्रवत्साम गीयमानम्। अभि राधसा जुगुरत् ॥५॥
हे स्तोता हो ! इन्द्रदेवले स्तोत्रको प्रशंसा गरुन्, छन्द जानून् र गाउन योग्य सामगान सुनून्। उनले ऐश्वर्य प्रदान गरेर हामीमाथि कृपा गरुन्।

आ नो भर दक्षिणेनाभि सव्येन प्र मृश। इन्द्र मा नो वसोर्निर्भाक् ॥६॥
हे इन्द्रदेव ! दुवै हातले हामीलाई ऐश्वर्य प्रदान गर, धनबाट वञ्चित नगर।

उप क्रमस्वा भर धृषता धृष्णो जनानाम्। अदाशूष्टरस्य वेदः ॥७॥
शत्रु संहार गर्ने हे इन्द्रदेव ! तिमी ऐश्वर्य प्राप्तिका लागि गमन गर। आफ्नो शक्तिले स्वार्थी मानिसको ऐश्वर्य खोसेर हामीलाई प्रदान गर।

इन्द्र य उ नु ते अस्ति वाजो विप्रेभिः सनित्वः । अस्माभिः सु तं सनुहि ॥८॥
हे इन्द्रदेव ! विप्रलाई वितरण गर्ने सम्पत्ति हामीलाई नै वितरण गर।

सद्योजुवस्ते वाजा अस्मभ्यं विश्वश्चन्द्राः । वशैश्च मक्षू जरन्ते ॥९॥
हे इन्द्रदेव ! तिम्रो ऐश्वर्य सबैलाई शीतलता प्रदान गर्ने र तत्काल प्राप्त हुने खालको छ। तिमी त्यो ऐश्वर्य हामीलाई र आफ्ना अधीनमा रहेका अरूलाई प्रदान गर।

[सूक्त - ८२]

ऋषि - कुसीदी काण्व। देवता - इन्द्र। छन्द - गायत्री।

आ प्र द्रव परावतोऽर्वावतश्च वृत्रहन्। मध्वः प्रति प्रभर्मणि ॥१॥
हे वृत्र संहार गर्ने इन्द्रदेव ! तिमी टाढा वा नजिक जहाँ भए पनि हाम्रा यज्ञमण्डपमा सोमरस पान गर्नका लागि अवश्य आऊ।

तीव्राः सोमास आ गहि सुतासो मादयिष्णवः । पिबा दधृग्यथोचिषे ॥२॥
हे इन्द्रदेव आनन्ददायी सोम पेलेका छौं, यहाँ तीव्र गतिले आएर सोमपान गर।

इषा मन्दस्वादु तेऽरं वराय मन्यवे। भुवत्त इन्द्र शं हृदे ॥३॥
हे इन्द्रदेव ! सोमरूप अन्नले हर्षित होऊ र त्यो तिम्रा हृदयका लागि हर्षकारी होस्। सेवन गरिसकेपछि तिम्रा हृदयमा जोस उत्पन्न गरोस्।

आ त्वशत्रवा गहि न्युक्थानि च हूयसे। उपमे रोचने दिवः ॥४॥
हे शत्रुविहीन, तेजसम्पन्न इन्द्रदेव ! तिमीलाई यज्ञमा स्तुतिले बोलाउँछौं। त्यसैले तिमी दिव्यलोकबाट यहाँ आऊ।

तुभ्यायमद्रिभिः सुतो गोभिः श्रीतो मदाय कम्। प्र सोम इन्द्र हूयते ॥५॥
हे इन्द्रदेव ! ढुङ्गाले पेलेर निचोर्दै तयार पारेको सोमरस हामी गाईका दुधमा सिमाएर तिम्रो प्रसन्नताका लागि तिमीलाई प्रदान गर्दछौं।

इन्द्र श्रुधि सु मे हवमस्मे सुतस्य गोमतः । वि पीतिं तृप्तिमश्नुहि ॥६॥
हे इन्द्रदेव ! हाम्रो आह्वान राम्ररी सुन। हामीबाट समर्पित गाईको दुध मिसाएर पेलिएको सोमरस पिएर तिमी आनन्दित होऊ।

य इन्द्र चमसेष्वा सोमश्चमूषु ते सुतः । पिबेदस्य त्वमीशिषे ॥७॥
हे सामर्थ्यशाली इन्द्रदेव ! तिम्रा लागि शुद्ध सोमरस चमस पात्रमा भरेर राखिएको छ। तिमी यो दिव्य रस पान गर।

यो अप्सु चन्द्रमा इव सोमश्चमूषु ददृशे। पिबेदस्य त्वमीशिषे ॥८॥
हे इन्द्रदेव ! अन्तरिक्षमा चन्द्रमाजस्तै देखिने ग्रहमा विद्यमान सोमरसका तिमी स्वामी हौ। त्यसैले तिमी यो पान गर।

यं ते श्येनः पदाभरत्तिरो रजांस्यस्पृतम्। पिबेदस्य त्वमीशिषे ॥९॥
हे इन्द्रदेव ! श्येन पक्षीले तिम्रा लागि कसैले नछोएको सोमरस स्वर्गबाट ल्याएको छ। त्यसैले पद्यसँगै तिमी यो सोमरस पान गर।

[सूक्त - ८३]

ऋषि - कुसीदी काण्व। देवता - विश्वेदेवा। छन्द - गायत्री।

देवानामिदवो महत्तदा वृणीमहे वयम्। वृष्णामस्मभ्यमूतये ॥१॥
हे बलशाली देवता हो ! आफ्नो रक्षाका लागि तिमीहरूका महिमाशाली संरक्षणको याचना गर्दछौं।

ते नः सन्तु युजः सदा वरुणो मित्रो अर्यमा। वृधासश्च प्रचेतसः ॥२॥
मित्र, वरुण र अर्यमा देवता सधैं हाम्रा सहायक बनून्। उनीहरू धनको अभिवृद्धि गराउने होऊन्।

अति नो विष्पिता पुरु नौभिरपो न पर्षथ। यूयमृतस्य रथ्यः ॥३॥
यज्ञका अगुवा हे देवता हो ! नौकाले नदी तरेझैं हामीलाई अनेकौं विपत्तिमा जोगाओ।

वामं नो अस्त्वर्यमन्वामं वरुण शंस्यम्। वामं ह्यावृणीमहे ॥४॥
हे वरुण र अर्यमादेव ! हामी तिमीहरूसित श्रेष्ठ ऐश्वर्यको याचना गर्दछौं। हामीलाई श्रेष्ठ तथा प्रशंसनीय ऐश्वर्य प्राप्त होस्।

**वामस्य हि प्रचेतस ईशानासो रिशादसः। नेमादित्या अघस्य यत्॥५॥**
शत्रु संहार गर्ने, विद्वान् देवता हो ! तिमीहरू श्रेष्ठ ऐश्वर्यका अधिष्ठाता हौ। हे आदित्यहरू हो ! दुष्कर्मीसित भएको ऐश्वर्य हामीलाई प्रदान गर।

**वयमिद्वः सुदानवः क्षियन्तो यान्तो अध्वन्ना। देवा वृधाय हूमहे॥६॥**
हे श्रेष्ठ दानी देवता हो ! हामी घरमा होऔं वा बाटामा, प्रगतिका लागि तिमीहरूलाई नै आह्वान गर्दछौं।

**अधि न इन्द्रैषां विष्णो सजात्यानाम्। इता मरुतो अश्विना॥७॥**
हे इन्द्रदेव, मरुत्‌देव, विष्णुदेव र अश्विनीकुमार हो ! आफन्तका माझमा हामीलाई सर्वश्रेष्ठ बनाओ।

**प्र भ्रातृत्वं सुदानवोऽध द्विता समान्या। मातुर्गर्भे भरामहे॥८॥**
हे श्रेष्ठ दानी देवता हो ! आमाका गर्भमा समानता र भ्रातृभावका दुवै किसिमले रहने तिमीहरूको बयान हामी स्तोता गर्दछौं।

**यूयं हि ष्ठा सुदानव इन्द्रज्येष्ठा अभिद्यवः। अधा चिद्व उत ब्रुवे॥९॥**
हे श्रेष्ठ दानी देवता हो ! तिमीहरू सबै ओजले सम्पन्न छौ, इन्द्रदेवलाई आफ्नो ज्येष्ठ स्वीकार गर्दछौ। त्यसैले हामी तिमीहरूको प्रार्थना गर्दछौं।

[सूक्त – ८४]

ऋषि – उशना काण्व। देवता – अग्नि। छन्द – गायत्री।

**प्रेष्ठं वो अतिथिं स्तुषे मित्रमिव प्रियम्। अग्निं रथं न वेद्यम्॥१॥**
हे अग्निदेव ! उपासकको अभिलाषा पूरा गर्ने, सधैं सबैमाथि कृपा गर्ने, मित्रजस्तो व्यवहार गर्ने तिमी हाम्रो प्रार्थनाले प्रसन्न होऊ।

**कविमिव प्रचेतसं यं देवासो अध द्विता। नि मर्त्येष्वादधुः॥२॥**
देवताहरू प्रशंसनीय ज्ञानीजस्ता भए। त्यसपछि उनीहरूले अग्निलाई दुई रूपमा मानिसका बीचमा स्थापित गरे।

**त्वं यविष्ठ दाशुषो नॄँः पाहि शृणुधी गिरः। रक्षा तोकमुत त्मना॥३॥**
सधैं युवा रहने हे अग्निदेव ! तिमी दानीहरूको रक्षा गर्नका लागि स्तुतिमा ध्यान देऊ। आफ्ना पुत्रको रक्षाका लागि प्रयत्नशील होऊ।

**कया ते अग्ने अङ्गिर ऊर्जो नपादुपस्तुतिम्। वराय देव मन्यते॥४॥**
हे अग्निदेव ! तिमी ऊर्जा खस्न नदिने अङ्गिरा हौ। वरण गर्न योग्य र विरोधीलाई सताउने तिमीलाई हामीले कुन शब्दले प्रशंसा गरौं ?

**दाशेम कस्य मनसा यज्ञस्य सहसो यहो। कदु वोच इदं नमः॥५॥**
हे पुरुषार्थबाट उत्पन्न भएका अग्निदेव ! कुन यजमानका यजन कर्मद्वारा तिम्रा लागि हामी आहुति अर्पित गरौं ? यो हवि तिमीलाई प्राप्त होस् भन्ने प्रार्थना कहिले गरौं ?

**अधा त्वं हि नस्करो विश्वा अस्मभ्यं सुक्षितीः। वाजद्रविणसो गिरः॥६॥**
हे अग्निदेव ! आफ्नो स्तुतिका प्रभावले हामी श्रेष्ठ स्थानका अधिपति र श्रेष्ठ पोषक धनधान्यले युक्त हुन सक्ने कृपा हामीमाथि होस्।

**कस्य नूनं परीणसो धियो जिन्वसि दम्पते। गोषाता यस्य ते गिरः॥७॥**
हे सत्यका रक्षक अग्निदेव ! तिमी कस्ता बुद्धिले प्रसन्न हुन्छौ ? तिमीलाई कसरी र कुन खालका स्तुति गर्नाले ज्ञानको साक्षात्कार हुन सक्दछ ?

**तं मर्जयन्त सुक्रतुं पुरोयावानमाजिषु। स्वेषु क्षयेषु वाजिनम्॥८॥**
अग्निदेव सत्कर्म गरेर युद्धमा शत्रु संहार गर्नका लागि अगाडि बढ्छन्। शक्तिशाली अग्निदेवलाई मानिसहरू आफ्ना घरमा स्थापित गरेर उपासना गर्दछन्।

**क्षेति क्षेमेभिः साधुभिर्नकिर्यं घ्नन्ति हन्ति यः। अग्ने सुवीर एधते॥९॥**
हे अग्निदेव ! तिमीबाट संरक्षित भएर आफ्ना घरमा सज्जनसँग निवास गर्ने व्यक्तिको संहार कुनै शत्रुले गर्न सक्दैन। तिनीहरू शत्रु संहार गर्दै श्रेष्ठ सन्तानले समृद्ध हुन्छन्।

[सूक्त – ८५]

**ऋषि** – कृष्ण आङ्गिरस। **देवता** – अश्विनीकुमार। **छन्द** – गायत्री।

**आ मे हवं नासत्याश्विना गच्छतं युवम्। मध्वः सोमस्य पीतये ॥१॥**

सत्यका पालक हे अश्विनीकुमार हो ! आह्वान सुनेर मधुर सोमरस पान गर्न आओ।

**इवं मे स्तोममश्विनेमं मे शृणुतं हवम्। मध्वः सोमस्य पीतये ॥२॥**

हे अश्विनीकुमार हो ! मिठो सोमरस पान गर्नका लागि हाम्रो आह्वान र स्तोत्र सुन।

**अयं वां कृष्णो अश्विना हवते वाजिनीवसू। मध्वः सोमस्य पीतये ॥३॥**

हे अश्विनीकुमार हो ! तिमीहरू अन्नरूपी ऐश्वर्यले युक्त छौ। हामी कृष्ण ऋषिहरू मधुर सोमरस पान गर्नका लागि तिमीहरूलाई आह्वान गर्दछौं।

**शृणुतं जरितुर्हवं कृष्णस्य स्तुवतो नरा। मध्वः सोमस्य पीतये ॥४॥**

हे अश्विनीकुमार हो ! स्तुति गर्ने कृष्ण ऋषिको आह्वान मिठो सोमपानका लागि सुन।

**छर्दिर्यन्तमदाभ्यं विप्राय स्तुवते नरा। मध्वः सोमस्य पीतये ॥५॥**

हे अश्विनीकुमार हो ! मिठो सोमरस पान गरेर विद्वान् होतालाई नष्ट नहुने खालको आवास प्रदान गर।

**गच्छतं दाशुषो गृहमित्था स्तुवतो अश्विना। मध्वः सोमस्य पीतये ॥६॥**

हे अश्विनीकुमार हो ! मिठो सोम पान गर्न आहुति प्रदान गर्ने याज्ञिकका घरमा आओ।

**युञ्जाथां रासभं रथे वीड्वङ्गे वृषण्वसू। मध्वः सोमस्य पीतये ॥७॥**

हे ऐश्वर्यवर्षक अश्विनीकुमार हो ! बलियो अश्व आवाज गर्ने रथमा नियोजित गरेर सोमपान गर्नका लागि आओ।

**त्रिवन्धुरेण त्रिवृता रथेना यातमश्विना। मध्वः सोमस्य पीतये ॥८॥**

हे अश्विनीकुमार हो ! तीनकुने आकारका तीन चटा फल्याक भएको रथमा सोमपान गर्नका लागि आओ।

**नू मे गिरो नासत्याश्विना प्रावतं युवम्। मध्वः सोमस्य पीतये ॥९॥**

सत्यपालक हे अश्विनीकुमार हो ! मधुर सोमपान गर्नका लागि हाम्रो स्तुति सुन।

[सूक्त – ८६]

**ऋषि** – कृष्ण आङ्गिरस विश्वक कार्ष्णि। **देवता** – अश्विनीकुमार। **छन्द** – जगती।

**उभा हि दस्रा भिषजा मयोभुवोभा दक्षस्य वचसो बभूवथुः।**
**ता वां विश्वको हवते तनूकृथे मा नो वि योष्टं सख्या मुमोचतम् ॥१॥**

सुन्दर हे अश्विनीकुमार हो ! तिमीहरू हर्षप्रदायक औषधिका रूप हौ र कुशलतापूर्वक गरिने स्तुति वचनका योग्य छौ। शारीरिक संरक्षणका लागि हामी विश्वक ऋषिहरू तिमीलाई आह्वान गर्दछौं। मित्रताबाट वञ्चित नगरीकन हाम्रो कष्ट हटाइदेओ।

**कथा नूनं वां विमना उप स्तवद्युवं धियं ददथुर्वस्य इष्टये।**
**ता वां विश्वको हवते तनूकृथे मा नो वि योष्टं सख्या मुमोचतम् ॥२॥**

हे अश्विनीकुमार हो ! विमना ऋषिले उहिले नै तिमीहरूको स्तुति कसरी गरेका थिए ? उत्तम ऐश्वर्य प्राप्त गर्नका लागि तिमीहरूले विमनालाई विवेक दियौ। शारीरिक संरक्षणका निम्ति हामी विश्वक ऋषिहरू आह्वान गर्दछौं। हामीलाई आफ्ना मित्रताबाट वञ्चित नगरीकन हाम्रो कष्ट हटाइदेओ।

**युवं हि ष्मा पुरुभुजेममेधतुं विष्णाप्वे ददथुर्वस्य इष्टये।**
**ता वां विश्वको हवते तनूकृथे मा नो वि योष्टं सख्या मुमोचतम् ॥३॥**

अनेकौंका पालक हे अश्विनीकुमार हो ! विष्णु आदिको अभिलाषा पूर्ण गराउने ऐश्वर्य प्रदान गरेका थियौ। त्यसैले शारीरिक संरक्षणका निम्ति हामी विश्वक ऋषिहरू आह्वान गर्दछौं। हामीलाई आफ्ना मित्रताबाट वञ्चित नगरीकन हाम्रो कष्ट हटाइदेओ।

उत त्यं वीरं धनसामृजीषिणं दूरे चित्सन्तमवसे हवामहे।
यस्य स्वादिष्ठा सुमतिः पितुर्यथा मा नो वि योष्टं सख्या मुमोचतम् ॥४॥

हे अश्विनीकुमार हो ! तिमीहरू ऐश्वर्य दान र सोमरस पान गर्ने हौ। श्रेष्ठ बुद्धिले पिताझैं हाम्रो पालन गर्दछौ। हामी संरक्षणका निम्ति टाढा भए पनि आह्वान गर्दछौं। हामीलाई आफ्ना मित्रताबाट वञ्चित नगरीकन हाम्रो कष्ट हटाइदेओ।

ऋतेन देवः सविता शमायत ऋतस्य शृङ्गमुर्विया वि पप्रथे।
ऋतं सासाह महि चित्पृतन्यतो मा नो वि योष्टं सख्या मुमोचतम् ॥५॥

ऋतद्वारा आदित्यले आफ्नो रश्मि समेट्दछन् र ऋतबाटै फेरि रश्मि फैलाउँछन्। विशाल सेनायुक्त शत्रु परास्त गर्दछन्। उनले हामीलाई आफ्ना मित्रताबाट वञ्चित नगरीकन हाम्रा कष्ट हटाइदिऊन्।

[सूक्त - ८७]

**ऋषि** - कृष्ण आङ्गिरस द्युम्नीक वासिष्ठ। **देवता** - अश्विनीकुमार। **छन्द** - प्रगाथ।

द्युम्नी वां स्तोमो अश्विना क्रिविर्न सेक आ गतम्।
मध्वः सुतस्य स दिवि प्रियो नरा पातं गौराविवेरिणे ॥१॥

हे अश्विनीकुमार हो ! झरीमा जलकुण्ड भरिएझैं तिमीहरू हाम्रा स्तुतिले परिपूर्ण भएर आओ। हरिणले जलकुण्डमा पानी पिएझैं द्युम्नीक ऋषिले पेलेको आनन्द प्रदायक सोमरस पान गर।

पिबतं घर्मं मधुमन्तमश्विना बर्हिः सीदतं नरा।
ता मन्दसाना मनुषो दुरोण आ नि पातं वेदसा वयः ॥२॥

हे अश्विनीकुमार हो ! हामी मानिसले तयार पारेका यज्ञमण्डपमा आएर कुशका आसनमा बस। मधुर सोमरस पान गरेर आनन्दित होओ। आफ्नो ऐश्वर्यद्वारा तिमीहरू हाम्रो आयु बचाइदेओ।

आ वां विश्वाभिरूतिभिः प्रियमेधा अहूषत।
ता वर्तिर्यातमुप वृक्तबर्हिषो जुष्टं यज्ञं दिविष्टिषु ॥३॥

हे अश्विनीकुमार हो ! हामी प्रियमेध ऋषि समस्त रक्षणसाधनसँगै आह्वान गर्दछौं। यज्ञमण्डपमा कुशका आसन ओछ्याएर राखेका छौं। त्यसैले तिमीहरू दुवै आएर हाम्रा श्रेष्ठ आहुति ग्रहण गर।

पिबतं सोमं मधुमन्तमश्विना बर्हिः सीदतं सुमत्।
ता वावृधाना उप सुष्टुतिं दिवो गन्तं गौराविवेरिणम् ॥४॥

हे अश्विनीकुमार हो ! हरिण जलको कुण्डका नजिक गएझैं तिमीहरू हाम्रो प्रार्थनाले सन्तुष्ट होओ। दिव्यलोकको सुखदायक आसन ग्रहण गर र मधुर सोमरस पान गर।

आ नूनं यातमश्विनाश्वेभिः प्रुषितप्सुभिः।
दस्रा हिरण्यवर्तनी शुभस्पती पातं सोममृतावृधा ॥५॥

सत्पात्रलाई पालन गर्ने र ऋतयज्ञको संवर्द्धन गर्ने हे अश्विनीकुमार हो ! तिमीहरू सुनौला रथले सम्पन्न छौ र शत्रुविनाशक हौ। तेजस्वी अश्वमा आएर सोमरस पान गर।

वयं हि वां हवामहे विपन्यवो विप्रासो वाजसातये।
ता वल्गू दस्रा पुरुदंससा धियाश्विना श्रुष्ट्या गतम् ॥६॥

हे अश्विनीकुमार हो ! प्रार्थना गर्ने विप्रहरू अन्न वितरणका लागि आह्वान गर्दछौं। तिमीहरू विभिन्न कर्म गर्ने र शत्रु विनाश गर्ने हौ। श्रेष्ठ सौन्दर्ययुक्त तथा विवेकवान्, तिमीहरू दुवै चाँडै आओ।

[सूक्त - ८८]

**ऋषि** - नोधा गौतम। **देवता** - इन्द्र। **छन्द** - प्रगाथ।

तं वो दस्ममृतीषहं वसोर्मन्दानमन्धसः।
अभि वत्सं न स्वसरेषु धेनव इन्द्रं गीर्भिर्नवामहे ॥१॥

हे ऋत्विक हो ! शत्रुबाट रक्षा गर्ने, तेजस्वी सोमरसले सन्तुष्ट हुने इन्द्रदेवलाई हामी स्तुति गर्दछौं। त्यो स्तुति गोठमा आफ्ना बाछासँग जान गाई हतारिएजस्तै हुन्छ।

द्युक्षं सुदानुं तविषीभिरावृतं गिरिं न पुरुभोजसम्।
क्षुमन्तं वाजं शतिनं सहस्रिणं मक्षू गोमन्तमीमहे ॥२॥

देवलोकवासी, उत्तम दानदाता, सामर्थ्यवान् इन्द्रदेवसित हामी सबै खालका ऐश्वर्य, सयौं गाई र पोषक अन्नको कामना गर्दछौं।

न त्वा बृहन्तो अद्रयो वरन्त इन्द्र वीडवः ।
यद्दित्ससि स्तुवते मावते वसु नकिष्टदा मिनाति ते ॥३॥

विशाल पर्वतजस्तै स्थिर, कर्तव्यपथमा अडिग हे इन्द्रदेव ! तिमीले प्रदान गरेको वैभव हामी यजमानलाई निरन्तर प्राप्त भइरहोस् ।

योद्धासि क्रत्वा शवसोत दंसना विश्वा जाताभि मज्मना ।
आ त्वायमर्क ऊतये ववर्तति यं गोतमा अजीजनन् ॥४॥

हे इन्द्रदेव ! तिमी कर्म र सामर्थ्यले वीर मानिएका छौ र समस्त जीवलाई नियन्त्रित गर्दछौ। आफ्नो सुरक्षाका लागि हामी बारम्बार तिमीलाई बोलाउँछौं। तिमीलाई गौतम वंशीले उत्पन्न गरेका हुन्।

प्र हि रिरिक्ष ओजसा दिवो अन्तेभ्यस्परि ।
न त्वा विव्याच रज इन्द्र पार्थिवमनु स्वधां ववक्षिथ ॥५॥

हे इन्द्रदेव ! तिमी आफ्ना ओजले द्युलोकभन्दा पर प्रतिष्ठित छौ। भूमण्डलको तेज पनि तिमीलाई व्याप्त गर्न सक्दैन। तिमी हाम्रा लागि स्वधा ल्याइदेऊ।

नकिः परिष्टिर्मघवन्मघस्य ते यद्दाशुषे दशस्यसि ।
अस्माकं बोध्युचथस्य चोदिता मंहिष्ठो वाजसातये ॥६॥

हे धनले सम्पन्न इन्द्रदेव ! तिमीले दातालाई धन प्रदान गर्न खोज्दा कसैले रोक्दैन। स्तोताका लागि धनका प्रेरक, सर्वश्रेष्ठ दाता, हामी उचथको स्तोत्र सुन।

[सूक्त – ८९]

**ऋषि** – नृमेध आङ्गिरस पुरुमेध। **देवता** – इन्द्र। **छन्द** – प्रगाथ अनुष्टुप् बृहती।

बृहदिन्द्राय गायत मरुतो वृत्रहन्तमम् ।
येन ज्योतिरजनयन्नृतावृधो देवं देवाय जागृवि ॥१॥

यज्ञका संवर्द्धक हे मरुत् हो ! सामगानद्वारा देवताहरूले इन्द्रदेवलाई जागृत र ज्योतिसम्पन्न गराएका थिए। शत्रु संहार गर्ने उही बृहत् साम इन्द्रका लागि गाओ।

अपाधमदभिशस्तीरशस्तिहाथेन्द्रो द्युम्न्याभवत् ।
देवास्त इन्द्र सख्याय येमिरे बृहद्भानो मरुद्गण ॥२॥

अत्यधिक तेज सम्पन्न हे मरुत् हो ! इन्द्रदेव समस्त हिंसक शत्रु र दुष्कर्मीको संहार गर्दछन्। यसै कारणले उनी ओजस्वी भए। हे इन्द्रदेव ! समस्त देवता, मित्रताका लागि तिम्रा नजिक पुग्दछन्।

प्र व इन्द्राय बृहते मरुतो ब्रह्मार्चत ।
वृत्रं हनति वृत्रहा शतक्रतुर्वज्रेण शतपर्वणा ॥३॥

हे मरुत् हो ! महान् इन्द्रदेवका लागि स्तुति अर्पित गर। शतकर्मा इन्द्रले सयौं ग्रन्थि भएका वज्रले वृत्रलाई मार्दछन्।

अभि प्र भर धृषता धृषन्मनः श्रवश्चित्ते असद् बृहत् ।
अर्षन्त्वापो जवसा वि मातरो हनो वृत्रं जया स्वः ॥४॥

बलियो मानसिकता भएका हे इन्द्रदेव ! समस्त श्रेष्ठ अन्न तिम्रै लागि हो। आफ्ना बलियो मानसिकताले हामीलाई तिमी त्यही अन्नद्वारा परिपूर्ण गराऊ। तिमी माताजस्ता जलधारालाई वेगका साथ प्रवाहित गर। हे इन्द्रदेव ! वृत्र संहार गर र जल जित।

यज्जायथा अपूर्व्य मघवन्वृत्रहत्याय । तत्पृथिवीमप्रथयस्तदस्तभ्ना उत द्याम् ॥

हे अद्भुत वैभवशाली इन्द्रदेव ! वृत्र संहारका लागि तिमी प्रकट भएर पृथ्वी विस्तृत गर्नुका साथसाथै द्युलोकलाई पनि स्थिर गरायौ।

तत्ते यज्ञो अजायत तदर्क उत हस्कृतिः ।
तद्विश्वमभिभूरसि यज्जातं यच्च जन्त्वम् ॥६॥

हे इन्द्रदेव ! तिमी प्रकट हुँदाखेरि श्रेष्ठ यज्ञ कर्म उत्पन्न भए र दिनलाई नियमित गराउने सूर्यदेव स्थापित भए। त्यसपछि उत्पन्न हुने सबै प्राणीहरू तिमीबाटै प्रेरित छन्।

आमासु पक्वमैरय आ सूर्यं रोहयो दिवि।
धर्मं न सामन्तपता सुवृक्तिभिर्जुष्टं गिर्वणसे बृहत् ॥७॥

हे इन्द्रदेव ! तिमीले अपरिपक्व गाईबाट परिपक्व दुध उत्पन्न गरेका छौ र आकाशमा सूर्यदेवलाई स्थापित गरेका छौ। याजकले यज्ञ प्रकट गर्दा स्तुतिले इन्द्रदेवमा हर्ष वृद्धि हुन्छ। हे स्तोता हो ! स्तुत्य इन्द्रदेवको प्रसन्नताका लागि बृहत् सामगान गर।

[सूक्त - ९०]

ऋषि - नृमेध आङ्गिरस पुरुमेध आङ्गिरस। देवता - इन्द्र। छन्द - प्रगाथ।

आ नो विश्वासु हव्य इन्द्रः समत्सु भूषतु।
उप ब्रह्माणि सवनानि वृत्रहा परमज्या ऋचीषमः ॥१॥

सङ्ग्राममा बोलाउन योग्य, वृत्रहन्ता, धनुषको गतिलो प्रत्यञ्चाजस्ता, उत्तम मन्त्रले स्तुत्य हे इन्द्रदेव ! हाम्रा तीनै कालका यज्ञ एवं स्तुतिलाई तिमी सुहाउँदो बनाइदेऊ।

त्वं दाता प्रथमो राजसामस्यसि सत्य ईशानकृत्।
तुविद्युम्नस्य युज्या वृणीमहे पुत्रस्य शवसो महः ॥२॥

हे इन्द्रदेव ! तिमी सर्वप्रथम धनदाता हौ। ऐश्वर्य प्रदान गर्छौ। तिमीसित हामी पराक्रमी र श्रेष्ठ सन्तानको कामना गर्दछौं।

ब्रह्मा त इन्द्र गिर्वणः क्रियन्ते अनतिद्भुता।
इमा जुषस्व हर्यश्व योजनेन्द्र या ते अमन्महि ॥३॥

प्रार्थनीय अश्व भएका हे इन्द्रदेव ! तिमी हाम्रो सत्यरूपी स्तोत्रले सुसङ्गत भएर तिनलाई ग्रहण गर र अरूले बोलेका मन्त्र पनि सेवन गर।

त्वं हि सत्यो मघवन्ननानतो वृत्रा भूरि न्यृञ्जसे।
स त्वं शविष्ठ वज्रहस्त दाशुषेऽर्वाञ्चं रयिमा कृधि ॥४॥

हे धनवान् इन्द्रदेव ! तिमी अनेकौं वृत्रको संहार गर्दछौ र यथार्थ रूपमा कसैका पनि अधीनमा हुँदैनौ। तिमी अत्यन्त शक्तिशाली र आफ्ना हातमा वज्र लिएका छौ। तिमी आहुति प्रदान गर्ने याजकतिर ऐश्वर्य प्रेषित गर।

त्वमिन्द्र यशा अस्यृजीषी शवसस्पते।
त्वं वृत्राणि हंस्यप्रतीन्येक इदनुत्ता चर्षणीधृता ॥५॥

हे इन्द्रदेव ! तिमी बलशाली, सोमपान गर्ने र कीर्तिवान् छौ। मानिसको हितका लागि अत्यधिक बलशाली शत्रुलाई कसैको सहायता विना एक्लै नष्ट गर्न समर्थ छौ।

तमु त्वा नूनमसुर प्रचेतसं राधो भागमिवेमहे।
महीव कृत्तिः शरणा त इन्द्र प्र ते सुम्ना नो अश्नवन् ॥६॥

हे शक्तिशाली इन्द्रदेव ! पितासित पुत्रले धन मागेझैं तिमीसित श्रेष्ठ ऐश्वर्य माग्दछौं। धन र ज्ञानसम्पन्न सबैका आश्रयदाता हुनाले तिम्रो असल सुख हामीलाई प्राप्त होस्।

[सूक्त - ९१]

ऋषि - अपाला आत्रेयी। देवता - इन्द्र। छन्द - अनुष्टुप् पंक्ति।

कन्या३ वारवायती सोममपि स्रुताविदत्।
अस्तं भरन्त्यब्रवीदिन्द्राय सुनवै त्वा शक्राय सुनवै त्वा ॥१॥

जलतर्फ उन्मुख कन्याले मार्गमा सोम प्राप्त गर्दछन्। घर पुगेर उनले म तिमीलाई इन्द्र र शक्रका लागि प्रयोग गर्छु भन्छन्।

असौ य एषि वीरको गृहंगृहं विचाकशत्।
इमं जम्भसुतं पिब धानावन्तं करम्भिणमपूपवन्तमुक्थिनम् ॥२॥

वीर इन्द्रदेव प्रकाशित भएर प्रत्येक घरका कोठामा पुग्दछन्। पिउनका लागि तयार पारिएको रस, धानका लावा, केरा, मालपुवाका साथै प्रशंसनीय सोमरस पान गरुन्।

आ चन त्वा चिकित्सामोऽधि चन त्वा नेमसि।
शनैरिव शनकैरिवेन्द्रायेन्दो परि स्रव ॥३॥

तिमीलाई बुझ्न हामी सक्दैनौं, तर बुझ्न खोज्दछौं। हे सोमदेव ! तिमी इन्द्रदेवका लागि बिस्तारैसित प्रवाहित होऊ।

कुविच्छकत्कुवित्करत्कुवित्रो वस्यसस्करत्।
कुवित्पतिद्विषो यतिरिन्द्रेण सङ्गमामहै ॥४॥

स्वामी रिसाएका कारण भ्रमणशील भएका हामीले इन्द्रदेवको उपासना धेरै गरेका छौं। उनले हामीलाई धेरै किसिमका सामर्थ्य, सक्रियता र साधनले सम्पन्न बनाऊन्।

इमानि त्रीणि विष्टपा तानीन्द्र वि रोहय।
शिरस्ततस्योर्वरामादिदं म उपोदरे ॥५॥

हे इन्द्रदेव ! मेरा पिताको मस्तिष्क, उर्वर भूमि र मेरो पेट यी तीनै वटा ठाउँलाई विशेष प्रयोजनका लागि श्रेष्ठ उत्पादनशील बनायौं।

असौ च या न उर्वरादिमां तन्वं१ मम।
अथो ततस्य यच्छिरः सर्वा ता रोमशा कृधि ॥६॥

तिमी हाम्रा यस उर्वर भूमि, हाम्रो यो शरीर र रचयिताका मस्तिष्कलाई अङ्कुरणशील या आनन्दित गराऊ।

खे रथस्य खेऽनसः खे युगस्य शतक्रतो।
अपालामिन्द्र त्रिष्पूत्व्यकृणोः सूर्यत्वचम् ॥७॥

सयौं असल कर्म गर्ने इन्द्रले रथ, अनस र दुवैलाई जोड्ने युग यी तीनै ठाउँ वा छिद्रबाट अपाला पवित्र गरेर उनको बाहिरी त्वचा सूर्यदेवको भन्दा बढी तेजसम्पन्न बनाए।

[सूक्त - ९२]

ऋषि - श्रुतकक्ष आङ्गिरस। देवता - इन्द्र। छन्द - गायत्री अनुष्टुप्।

पान्तमा वो अन्धस इन्द्रमभि प्र गायत।
विश्वासाहं शतक्रतुं मंहिष्ठं चर्षणीनाम् ॥१॥

हे याजक हो ! सामर्थ्यवान्, सयौं किसिमका यज्ञ आदि कर्म गर्ने, शत्रुनाशक, सोमरस पान गर्ने, इन्द्रदेवको प्रार्थना विशेष स्तोत्रले गर।

पुरुहूतं पुरुष्टुतं गाथान्यं१ सनश्रुतम्। इन्द्र इति ब्रवीतन ॥२॥

हे ऋत्विक् हो ! सहायताका लागि धेरै तिरबाट बोलाइँदा अनेकौं तिरबाट स्तुति गरिने र सनातन कालदेखि नै प्रसिद्ध उनै इन्द्रदेवलाई वन्दना गर।

इन्द्र इन्नो महानां दाता वाजानां नृतुः। महाँ अभिज्ञ्वा यमत् ॥३॥

सबैलाई गति दिने, धनधान्यले परिपूर्ण गर्ने, महान् इन्द्रदेव हाम्रा अगाडि प्रकट होऊन् र हामीलाई ऐश्वर्य प्रदान गरुन्।

अपादु शिप्रयन्धसः सुदक्षस्य प्रहोषिणः। इन्दोरिन्द्रो यवाशिरः ॥४॥

किरीटधारी इन्द्रदेवले देवताका लागि हवि दिन कुशल याज्ञिकद्वारा समर्पित जौंको पिठो र दुध मिसिएको सोमरसरूपी हविष्यात्र ग्रहण गरे।

तम्वभि प्रार्चतेन्द्रं सोमस्य पीतये। तदिद्ध्यस्य वर्धनम् ॥५॥

इन्द्रदेवलाई सोमपानका लागि प्रार्थना गरौं। सोमरसले उनलाई समृद्धिशाली बनाउँछ।

अस्य पीत्वा मदानां देवो देवस्यौजसा। विश्वाभि भुवना भुवत् ॥६॥

हे इन्द्रदेव ! हर्षप्रदायक सोमरस पान गरेर महान् ओजले समस्त लोक नियन्त्रित गर्छौ।

त्यमु वः सत्रासाहं विश्वासु गीर्ष्वायतम्। आ च्यावयस्यूतये ॥७॥

हे याजक हो ! आफ्ना समस्त वाणीले उच्चरित उत्तम स्तुतिले आफ्नो संरक्षणका लागि असुरविजयी इन्द्रदेवलाई आह्वान गर।

युध्मं सन्तमनर्वाणं सोमपामनपच्युतम्। नरमवार्यक्रतुम् ॥८॥

युद्धमा पराजित नहुने, शत्रुका काल र सोमरस पान गर्ने अपरिवर्तनीय निर्णय भएका तथा नायक इन्द्रदेवको सहयोग पाउनका लागि हामी उनलाई आह्वान गर्दछौं।

शिक्षा ण इन्द्र राय आ पुरु विद्वाँ ऋचीषम। अवा नः पार्ये धने ॥९॥

हे दर्शनीय, सर्वज्ञ इन्द्रदेव ! हामीलाई पर्याप्त धन देऊ। शत्रुसित जितेर ल्याएको धन हाम्रा काममा खटाऊ।

**अतश्चिदिन्द्र ण उपा याहि शतवाजया। इषा सहस्रवाजया॥१०॥**

हे इन्द्रदेव ! सयौँ किसिमका बलले परिपूर्ण हजारौँ किसिमका पोषक तत्त्व र रसका साथमा अन्तरिक्षबाट तिमी हाम्रा यज्ञमा आउने कृपा गर।

**अयाम धीवतो धियोऽर्वद्भिः शक्र गोदरे। जयेम पृत्सु वज्रिवः॥११॥**

हे बलशाली र वज्रधारी इन्द्रदेव ! तिमी पहाड नष्ट गर्दछौ। हामी विवेकपूर्ण कार्य गरौँ र तिमीबाट प्रदान गरिएका अश्वले युद्धमा विजयश्री ग्रहण गर्ने होऔँ।

**वयमु त्वा शतक्रतो गावो न यवसेष्वा। उक्थेषु रणयामसि॥१२॥**

हे सयौँ असल काम गर्ने इन्द्रदेव ! गोठालाले जौँको घाँसले गाई खुसी पारेझैँ तिमीलाई हामी आफ्ना स्तोत्रले खुसी पार्दछौँ।

**विश्वा हि मर्त्यत्वनानुकामा शतक्रतो। अगन्म वज्रिन्नाशसः॥१३॥**

हे सयौँ कर्म गर्ने इन्द्रदेव ! तिमी वज्र धारण गर्दछौ। समस्त मानिसका रहर पूरा गर्न खोज्छौ, उसै गरी हामी पनि ऐश्वर्यको रहर गर्दछौँ।

**त्वे सु पुत्र शवसोऽवृत्रन् कामकातयः। न त्वामिन्द्राति रिच्यते॥१४॥**

शक्तिका पुत्र हे इन्द्रदेव ! ऐश्वर्यको रहर गर्ने मानिसले तिमीलाई प्रार्थना गर्दछन्। किनभने तिमीभन्दा श्रेष्ठ देवता अर्को कुनै छैन।

**स नो वृषन्त्सनिष्ठया सं घोरया द्रवित्न्वा। धियाविड्ढि पुरन्ध्या॥१५॥**

हे शक्तिशाली इन्द्रदेव ! तिमी शत्रुका लागि भयङ्कर र सत्पुरुषका लागि ऐश्वर्य प्रदान गर्ने हौ। तिमी आफ्ना श्रेष्ठ गुणले युक्त बुद्धिद्वारा हाम्रो रक्षा गर।

**यस्ते नूनं शतक्रतविन्द्र द्युम्नितमो मदः। तेन नूनं मदे मदेः॥१६॥**

हे सयौँ कर्म गर्ने इन्द्रदेव ! तिम्रा लागि अति तेजस्वी, पेलेर तयार पारेको सोमरस तयार गरेका छौँ, त्यो पान गरेर तृप्त होऊ र धन आदि दिएर हामीलाई आनन्दित गराऊ।

**यस्ते चित्रश्रवस्तमो य इन्द्र वृत्रहन्तमः। य ओजोदातमो मदः॥१७॥**

हे इन्द्रदेव ! सोमरस अत्यन्त कीर्तिमान्, अद्भुत, हर्षप्रदायक, ओजप्रदाक र वृत्र संहार गर्ने खालको छ, त्यो हामीले तिम्रा लागि नै पेलेर बनाएका हौँ।

**विद्मा हि यस्ते अद्रिवस्त्वादत्तः सत्य सोमपाः। विश्वासु दस्म कृष्टिषु॥१८॥**

वज्रधारी र अविनाशी हे इन्द्रदेव ! तिमी देख्नका लागि योग्य र सोमरस पान गर्ने हौ। समस्त मानिसलाई तिमीले जुन ऐश्वर्य प्रदान गरेका छौ, त्यो हामीलाई थाहा छ।

**इन्द्राय मद्वने सुतं परि ष्टोभन्तु नो गिरः। अर्कमर्चन्तु कारवः॥१९॥**

आनन्दमयी प्रकृति भएका, इन्द्रदेवका लागि निकालेको दिव्य सोमरसलाई स्तोताहरू स्तुतिले प्रशंसा गर्दछन्।

**यस्मिन् विश्वा अधि श्रियो सप्त संसदः। इन्द्रं सुते हवामहे॥२०॥**

कान्तिमान् इन्द्रदेवलाई हामी सोमयज्ञमा आह्वान गर्दछौँ, उनको स्तुति यज्ञका सातै ऋत्विकले गर्दछन्।

**त्रिकद्रुकेषु चेतनं देवासो यज्ञमत्नत। तमिद्वर्धन्तु नो गिरः॥२१॥**

प्रेरणादायी, उत्साह बढाउने, तीन चरणमा सम्पन्न हुने यज्ञ देवताले विस्तार गर्दछन्। साधकहरू त्यस्ता यज्ञको प्रशंसा गर्दछन्।

**आ त्वा विशन्त्विन्दवः समुद्रमिव सिन्धवः। न त्वामिन्द्राति रिच्यते॥२२॥**

हे इन्द्रदेव ! समुद्रमा नदी मिसिएझैँ सोमरस तिमीभित्र प्रवेश गर्दछ। हे इन्द्रदेव ! तिमीभन्दा महान् अर्को देवता छैन।

**विव्यक्थ महिना वृषन्भक्षं सोमस्य जागृवे। य इन्द्र जठरेषु ते॥२३॥**

शक्तिमान्, जागरणशील हे इन्द्रदेव ! तिमी सोमपानका लागि आफ्ना ख्यातिले सबै ठाउँमा व्याप्त रहन्छौ। तिमीले पेटमा पुऱ्याएको सोमरस पनि प्रशंसनीय हुन्छ।

**अरं त इन्द्र कुक्षये सोमो भवतु वृत्रहन्। अरं धामभ्य इन्दवः॥२४॥**

हे वृत्रहन्ता इन्द्रदेव ! हामीले प्रदान गरेको सोमरस तिम्रा लागि पर्याप्त होस्। तिम्रा साथसाथै यो सबै देवताका लागि पनि पर्याप्त होस्।

अरमश्वाय गायति श्रुतकक्षो अरं गवे। अरमिन्द्रस्य धाम्ने ॥२५॥
गाई, अश्व र इन्द्रदेवको आवास प्राप्त गर्नका लागि श्रुतकक्ष ऋषि स्तोत्र गाउँछन्।
अरं हि ष्मा सुतेषु णः सोमेष्विन्द्र भूषसि। अरं ते शक्र दावने ॥२६॥
हे इन्द्रदेव ! हामीले पेलेको सोमरस तिमी विभूषित गर्दछौ। तिमी ऐश्वर्य प्रदान गर्दछौ। तिम्रा लागि यो सोमरस पर्याप्त होस्।
पराकात्ताच्चिदद्रिवस्त्वां नक्षन्त नो गिरः। अरं गमाम ते वयम् ॥२७॥
हे वज्रधारी इन्द्रदेव ! पर रहे पनि हाम्रो प्रार्थना तिमीकहाँ पुग्दछ। हामी तिम्रो ऐश्वर्य प्रचुर मात्रामा ग्रहण गरौँ।
एवा ह्यसि वीरयुरेवा शूर उत स्थिरः। एवा ते राध्यं मनः ॥२८॥
हे बलवान् इन्द्रदेव ! रणक्षेत्रमा शत्रु पराजित गर्दै अडिग रहने तिमी शूरवीर हौ। तिम्रो मन प्रशंसाका लागि योग्य छ।
एवा रातिस्तुवीमघ विश्वेभिर्धायि धातृभिः। अधा चिदिन्द्र मे सचा ॥२९॥
हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमीले प्रदान गरेको साधन सबै याजकले प्राप्त गर्दछन्। हामीलाई ऐश्वर्यवान् बनाएर सहायता गर।
मो षु ब्रह्मेव तन्द्रयुर्भुवो वाजानां पते। मत्स्वा सुतस्य गोमतः ॥३०॥
अन्नका अधिपति हे इन्द्रदेव ! तिमी गाईको दुधमा मिसाएको मिठो सोमरस पान गरेर आनन्दित होऊ। अल्छे ब्राह्मणजस्ता निष्क्रिय नहोऊ।
मा न इन्द्राभ्याऽदिशः सूरो अक्तुष्वा यमन्। त्वा युजा वनेम तत् ॥३१॥
हे इन्द्रदेव ! सर्वत्र विचरणशील, सबैतिर शस्त्र फ्याँक्नेहरू रातका समयमा हाम्रा नजिक आउन नसकून्। तिम्रा कृपाले तिनीहरू नाश होऊन्।
त्वयेदिन्द्र युजा वयं प्रति ब्रुवीमहि स्पृधः। त्वमस्माकं तव स्मसि ॥३२॥
हे इन्द्रदेव ! तिमी हाम्रा हौ र हामी तिम्रै हौँ। तिम्रा सहयोगले शत्रु जित्न सक्दछौँ।
त्वामिद्धि त्वायवोऽनुनोनुवतश्चरान्। सखाय इन्द्र कारवः ॥३३॥
हे इन्द्रदेव ! तिम्रो इच्छा गर्ने हामी स्तोताहरू तिम्रै प्रार्थना गर्दछौँ।

## [सूक्त – ९३]

ऋषि – सुकक्ष आङ्गिरस। देवता – इन्द्र ऋभुगण। छन्द – गायत्री।

उद्घेदभि श्रुतामघं वृषभं नर्यापसम्। अस्तारमेषि सूर्य ॥१॥
संसारप्रसिद्ध, ऐश्वर्यसम्पन्न, शक्तिशाली, मानिसका हितैषि र अस्त्र प्रहार गर्ने उदीयमान सूर्य इन्द्रदेव नै हुन्।
नव यो नवतिं पुरो बिभेद बाह्वोजसा। अहिं च वृत्रहावधीत् ॥२॥
बाहुबलले शत्रुका उनान्सय निवास केन्द्र विध्वंस गर्ने र वृत्र नामका दुष्टको नाश गर्ने इन्द्रदेवले हामीलाई अभीष्ट धन प्रदान गरुन्।
स न इन्द्रः शिवः सखाश्वावद् गोमद्यवमत्। उरुधारेव दोहते ॥३॥
हाम्रा लागि कल्याणकारी मित्रजस्ता इन्द्रदेवले गाईका दुधको धाराझैँ बहुसङ्ख्यक धन प्रदान गरुन्।
यदद्य कच्च वृत्रहन्नुदगा अभि सूर्य। सर्वं तदिन्द्र ते वशे ॥४॥
वृत्रसंहारक, उदीयमान इन्द्रदेव ! तिमीले प्रकट गर्ने सबै थोक तिम्रै अधिकारमा हुन्छ।
यद्वा प्रवृद्ध सत्पते न मरा इति मन्यसे। उतो तत्सत्यमित्तव ॥५॥
प्रगति गर्ने र सज्जनलाई पालन गर्ने हे इन्द्रदेव ! तिमी आफूलाई अमर मान्दछौ, तिम्रो त्यो मान्यता यथार्थ नै छ।
ये सोमासः परावति ये अर्वावति सुन्विरे। सर्वांस्ताँ इन्द्र गच्छसि ॥६॥
हे इन्द्रदेव ! टाढा वा नजिक सोमरस जहाँ पेलिन्छ, तिमी ती सबै ठाउँमा पुग्दछौ।
तमिन्द्रं वाजयामसि महे वृत्राय हन्तवे। स वृषा वृषभो भुवत् ॥७॥
वृत्र नाश गर्नेलाई हामी प्रशंसा र स्तुति गर्दछौँ। ती दान दाता इन्द्रदेवले हामीलाई धनधान्यले भरिपूर्ण गराऊन्।

इन्द्रः स दामने कृत ओजिष्ठः स मदे हितः। द्युम्नी श्लोकी स सोम्यः ॥८॥
दान दिन उत्पन्न भएका इन्द्रदेव बलवान् बन्नका लागि सोमपान गर्दछन्। प्रशंसनीय कार्य गर्ने इन्द्रदेव सोमपान गराउन योग्य छन्।

गिरा वज्रो न सम्भृतः सबलो अनपच्युतः। ववक्ष ऋष्वो अस्तृतः ॥९॥
वज्र हातमा लिने, स्तुतिले प्रशंसित, बलवान्, तेजस्वी र अपराजेय इन्द्रदेव साधकलाई ऐश्वर्य दिने इच्छा गर्दछन्।

दुर्गे चित्रः सुगं कृधि गृणान इन्द्र गिर्वणः। त्वं च मघवन् वशः ॥१०॥
प्रार्थनीय र धनवान् हे इन्द्रदेव ! हामीमाथि तिमीले कृपा गर्दा दुर्गम स्थानसम्म सजिलै पुग्ने योग्य बनाउँछौ।

यस्य ते नू चिदादिशं न मिनन्ति स्वराज्यम्। न देवो नाध्रिगुर्जनः ॥११॥
हे इन्द्रदेव ! तिम्रो आज्ञा र अनुशासन कुनै देवता वा मानिसले उल्लङ्घन गर्न सक्दैन।

अधा ते अप्रतिष्कुतं देवी शुष्मं सपर्यतः। उभे सुशिप्र रोदसी ॥१२॥
हे इन्द्रदेव ! द्युलोक र पृथिवीलोक दुवै तिम्रा अदम्य सामर्थ्यको उपासना गर्दछन्।

त्वमेतदधारयः कृष्णासु रोहिणीषु च। परुष्णीषु रुशत् पयः ॥१३॥
हे इन्द्रदेव ! काला, राता आदि अनेकौँ रङ्गका गाईमा देदीप्यमान सेतो दुध तिमीले स्थापित गराएका छौ। यो तिम्रो अद्‌भुत सामर्थ्य नै हो।

वि यदहेरध त्विषो विश्वे देवासो अक्रमुः। विदन्मृगस्य ताँ अमः ॥१४॥
अहि राक्षससित डराएर सबै देवता भागेका बेला इन्द्रदेवले त्यस शत्रुको सामर्थ्य बुझिसकेका थिए।

आदु मे निवरो भुवद्‌वृत्रहादिष्ट पौंस्यम्। अजातशत्रुरस्तृतः ॥१५॥
वृत्रहन्ता इन्द्रदेवले हाम्रा शत्रु संहार गर्न थालेदेखि उनी शत्रुविहीन र अपराजेय भए।

श्रुतं वो वृत्रहन्तमं प्र शर्धं चर्षणीनाम्। आ शुषे राधसे महे ॥१६॥
हे ऋत्विक् हो ! वृत्रहन्ता, बलशाली, हितैषि इन्द्रदेवको स्तुति गर्दै तिमीहरूलाई महान् ऐश्वर्य प्रदान गर्दछु।

अया धिया च गव्यया पुरुणामन्पुरुष्टुत। यत्सोमेसोम आभवः ॥१७॥
धेरै नाम भएका, धेरै तिरबाट प्रशंसित हे इन्द्रदेव ! तिमी पुगेका प्रत्येक सोमयज्ञमा गाईको कामना गर्ने बुद्धिले हामी तिम्रो स्तुति गर्दछौँ।

बोधिन्मना इदस्तु नो वृत्रहा भूर्यासुतिः। शृणोतु शक्र आशिषम् ॥१८॥
इन्द्रदेवका लागि धेरै किसिमका मानिसले सोमरस तयार गर्दछन्। उनले हाम्रो कामना जान्दछन्। युद्धक्षेत्रमा शत्रु पराजित गर्ने, सामर्थ्यवान् र वृत्रसंहारक इन्द्रदेवले हाम्रो स्तुति ध्यानपूर्वक सुनून्।

कया त्वन्न कत्याभि प्र मन्दसे वृषन्। कया स्तोतृभ्य आ भर ॥१९॥
हे अभीष्ट फलदायक इन्द्रदेव ! तिमी कुन साधनले रक्षा गर्दै हामीलाई अति हर्ष प्रदान गर्दछौ ? कस्ता खालका संरक्षण साधनले तिमी स्तोतालाई सम्पन्न बनाउँछौ ?

कस्य वृषा सुते सचा नियुत्वान्वृषभो रणत्। वृत्रहा सोमपीतये ॥२०॥
सामर्थ्यवान्, अश्ववान्, वृत्रहन्ता र अभिलाषा पूरा गराउने हे इन्द्रदेव ! कुन याजकको सोम अभिषवमा भाग लिएर तिमी हर्षित हुन्छौ ?

अभि षु णस्त्वं रयिं मन्दसानः सहस्रिणम्। प्रयन्ता बोधि दाशुषे ॥२१॥
हे इन्द्रदेव ! तिमी हर्षित भएर हामीलाई सहस्र किसिमको ऐश्वर्य प्रदान गर। हवि प्रदान गर्नेलाई प्रेरित गर्ने तिमी हाम्रो स्तुतिमा ध्यान देऊ।

पत्नीवन्तः सुता इम उशन्तो यन्ति वीतये। अपां जग्मिर्निचुम्पुणः ॥२२॥
पोषक जलले युक्त, अभिषुत सोमरस इन्द्रदेवले पिउनका लागि उनैतिर प्रवाहित हुन्छ। सोमरस उनलाई आनन्दित गराउँदै जलमा मिसियोस्।

इष्टा होत्रा असृक्षतेन्द्रं वृधासो अध्वरे। अच्छावभृथमोजसा ॥२३॥
इन्द्रदेवको प्रशंसा गर्ने याजक आफ्ना शक्तिले हाम्रा यज्ञमा अवभृथ स्नान गरुन्जेल यज्ञको आहुति दिइरहन्छन्।

**इह त्या सधमाद्या हरी हिरण्यकेश्या। वोळ्हामभि प्रयो हितम् ॥२४॥**
सुनौला जगर भएका र सधैं सँगै रहने इन्द्रदेवका दुवै अश्वले उनका लागि सोमरूपी अन्न लिएर आऊन्।

**तुभ्यं सोमाः सुता इमे तीर्णं बर्हिर्विभावसो। स्तोतृभ्य इन्द्रमा वह ॥२५॥**
हे अग्निदेव ! तिम्रा लागि यो सोमरस छानेका छौं। पवित्र कुशको आसन बिछाएका छौं। तिमी स्तोताका निम्ति इन्द्रदेवको आह्वान गर।

**आ ते दक्षं वि रोचना दधद्रत्ना वि दाशुषे। स्तोतृभ्य इन्द्रमर्चत ॥२६॥**
हे याजक हो ! स्तुति गर्नेहरूका लागि इन्द्रदेवको उपासना गर। त्यसो गर्दा हवि प्रदाता यजमानलाई उनले शक्ति र रत्न प्रदान गरुन्।

**आ ते दधामीन्द्रियमुक्था विश्वा शतक्रतो। स्तोतृभ्य इन्द्र मृडय ॥२७॥**
हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! सबै बलवर्द्धक स्तोत्र हामी तिम्रै लागि उच्चारण गर्दछौं। स्तुति प्रदान गर्नेलाई सुख प्रदान गर।

**भद्रम्भद्रं न आ भरेषमूर्जं शतक्रतो। यदिन्द्र मृडयासि नः ॥२८॥**
हे सयौं यज्ञ पूरा गर्ने इन्द्रदेव ! हामीलाई सुखकारी अन्नबलले युक्त ऐश्वर्य प्रचुर मात्रामा प्रदान गर। किनभने तिमीले नै हामीलाई सुखी बनाउँछौ।

**स नो विश्वान्या भर सुवितानि शतक्रतो। यदिन्द्र मृडयासि नः ॥२९॥**
हे सयौं यज्ञ गरेका इन्द्रदेव ! हामीलाई सुख प्रदान गर्ने इच्छा गर्दछौ भनेदेखि समस्त हितकारी ऐश्वर्यले हामीलाई परिपूर्ण गराऊ।

**त्वामिद्वृत्रहन्तम सुतावन्तो हवामहे। यदिन्द्र मृडयासि नः ॥३०॥**
शत्रु विनाश गर्ने हे इन्द्रदेव ! सोम अभिषव गर्ने हामी याजकले तिमीलाई आह्वान गर्दा हामीलाई सुख प्रदान गर।

**उप नो हरिभिः सुतं याहि मदानां पते। उप नो हरिभिः सुतम् ॥३१॥**
हे सोमका अधिपति इन्द्रदेव ! श्रेष्ठ घोडामा हाम्रा सोमयज्ञमा बारम्बार आऊ।

**द्विता यो वृत्रहन्तमो विद इन्द्रः शतक्रतुः। उप नो हरिभिः सुतम् ॥३२॥**
इन्द्रदेव वृत्रहन्ता र शतक्रतु यी दुवै नामले परिचित छन्। हामीले पेलेको सोमरसका नजिकै आफ्ना अश्वमा उनी आऊन्।

**त्वं हि वृत्रहन्नेषां पाता सोमानामसि। उप नो हरिभिः सुतम् ॥३३॥**
हे शत्रुहन्ता इन्द्रदेव ! सोमरस पान गर्ने इच्छा गरेर हाम्रा यज्ञमा अश्वमा आऊ।

**इन्द्र इषे ददातु न ऋभुक्षणमृभुं रयिम्। वाजी ददातु वाजिनम् ॥३४॥**
हे बलशाली ! शक्तिसम्पन्न इन्द्रदेवले हामीलाई श्रेष्ठ धनले सधैं पूर्ण गराऊन्। अन्न प्राप्त गर्नका लागि श्रेष्ठ उत्तराधिकार प्रदान गरुन्। हामीलाई बलवान् बनाऊ।

## [सूक्त – ९४]

**ऋषि** – बिन्दु अथवा पूतदक्ष आङ्गिरस। **देवता** – मरुद्गण। **छन्द** – गायत्री।

**गौर्धयति मरुतां श्रवस्युर्माता मघोनाम्। युक्ता वह्नी रथानाम् ॥१॥**
धनसम्पन्न मरुत्हरूका गौमाताले अन्न आदि उत्पादन गर्ने इच्छाले पुत्रलाई दुधपान गराउँछन्। तिनले मरुत्हरूलाई रथमा नियोजित गर्दछन्।

**यस्या देवा उपस्थे व्रता विश्वे धारयन्ते। सूर्यामासा दृशे कम् ॥२॥**
गौमाताका नजिकै रहेर समस्त देवता आआफ्ना व्रत विधिवत् रूपमा निर्वाह गर्दछन्। सूर्य र चन्द्रमा पनि यिनैका नजिक रहेर समस्त भुवन आलोकित गराउँछन्।

**तत्सु नो विश्वे अर्य आ सदा गृणन्ति कारवः। मरुतः सोमपीतये ॥३॥**
हे मरुत्हरू हो ! समस्त स्तोता तिमीहरूका सामर्थ्यलाई विधिवत् प्रार्थना गर्दछन्। त्यसैले सोमरस पान गर्नका लागि तिमीहरू यहाँ आओ।

**अस्ति सोमो अयं सुतः पिबन्त्यस्य मरुतः। उप स्वराजो अश्विना ॥४॥**
हामीबाट शोधित यो सोमरस तेजस्वी मरुत्गण र अश्विनीकुमारले पान गर्दछन्।

पिबन्ति मित्रो अर्यमा तना पूतस्य वरुणः । त्रिषधस्थस्य जावतः ॥५॥
मित्र, अर्यमा र वरुणदेव संस्कारित र तीन पात्रमा भएको प्रशंसित सोमरस पान गर्छन् ।

उतो न्वस्य जोषमाँ इन्द्रः सुतस्य गोमतः । प्रातर्होतेनव मत्पति ॥६॥
बिहान यज्ञ गर्ने होताजस्तै इन्द्रदेव गाईको दुधयुक्त सोम पान गरेर आनन्दित हुन्छन् ।

कदत्विषन्त सूरयस्तिर आप इव स्रिधः । अर्षन्ति पूतदक्षसः ॥७॥
विद्वान् मरुतहरू वक्र गतिले कहिले उत्पन्न होलान् ? शत्रु संहार गर्ने उनीहरू नै हुन् । पवित्र शक्ति ग्रहण गर्ने ती मरुत्‌हरू हाम्रा यज्ञमा कहिले आऊलान् ?

कद्वो अद्य महानां देवानामवो वृणे । त्मना च दस्मवर्चसाम् ॥८॥
हे अत्यन्त तेजयुक्त, श्रेष्ठ र प्रदीप्त मरुत्‌हरू हो ! तिमीहरूसित सुरक्षाका लागि प्रार्थना हामी स्तोताहरूले कहिले गरौं ?

आ ये विश्वा पार्थिवानि पप्रथन्रोचना दिवः । मरुतः सोमपीतये ॥९॥
मरुत्‌हरूले धर्तीका र दिव्यलोकका तेजयुक्त सबै पदार्थ संवर्द्धित गरेका छन् । उनै वीरहरूलाई हामी सोमरस पान गर्नका लागि बोलाउँछौं ।

त्यान्नु पूतदक्षसो दिवो वो मरुतो हुवे । अस्य सोमस्य पीतये ॥१०॥
हे अत्यन्त तेजयुक्त र पवित्र शक्तिले सम्पन्न मरुत्‌हरू हो ! हामी सोमरस पान गर्नका लागि तिमीहरूको आह्वान गर्दछौं ।

त्यान्नु ये वि रोदसी तस्तभुर्मरुतो हुवे । अस्य सोमस्य पीतये ॥११॥
मरुत्‌हरूले आकाश र धर्तीलाई आधार प्रदान गरेका छन् । हामी उनलाई सोमरस पान गर्नका लागि आह्वान गर्दछौं ।

त्यं नु मारुतं गणं गिरिष्ठां वृषणं हुवे । अस्य सोमस्य पीतये ॥१२॥
पर्वतमा निवास गर्ने र शक्तिले सम्पन्न मरुत्‌हरूका समूहलाई सोमरस पान गर्नका लागि हामी आह्वान गर्दछौं ।

[सूक्त - ९५]

ऋषि - तिरश्ची आङ्गिरस । देवता - इन्द्र । छन्द - अनुष्टुप् ।

आ त्वा गिरो रथीरिवाऽस्थुः सुतेषु गिर्वणः ।
अभि त्वा समनूषतेन्द्र वत्सं न मातरः ॥१॥
हे स्तुत्य इन्द्रदेव ! रथमा आरुढ भएर सुरक्षित पुग्ने योद्धाजस्तै र बाछाका नजिकै चाँडै पुग्न खोज्ने गाईजस्तै सोमयागमा हाम्रो स्तुति तिम्रा निकट पुग्दछन् ।

आ त्वा शुक्रा अचुच्यवुः सुतास इन्द्र गिर्वणः ।
पिबा त्व१ स्यान्धस इन्द्र विश्वासु ते हितम् ॥२॥
हे प्रार्थनीय इन्द्रदेव ! तिम्रा निम्ति सबै दिशामा सोमरस विद्यमान छ । पेलेको सोमरस तिम्रा नजिक चाँडै पुगोस् । हे इन्द्रदेव ! तिमी अन्नरूपी सोमरस पान गर ।

पिबा सोमं मदाय कमिन्द्र श्येनाभृतं सुतम् ।
त्वं हि शश्वतीनां पती राजा विशामसि ॥३॥
हे इन्द्रदेव ! तिमी सबै प्रजाका स्वामी र सम्राट हौ । श्येन पक्षीले ल्याएपछि पेलेर तयार गरेको सोमरस पान गरेर उत्साहित होऊ । तिमी सबै प्रजाका स्वामी र शासक हौ ।

श्रुधी हवं तिरश्च्या इन्द्र यस्त्वा सपर्यति ।
सुवीर्यस्य गोमतो रायस्पूर्धि महाँ असि ॥४॥
हे इन्द्रदेव ! सत्कार गर्ने तिरश्ची ऋषिको स्तोत्र सुन । हे महान् इन्द्रदेव ! तिमी श्रेष्ठ बल र गाई प्रदान गर्दै हामीलाई धनसम्पदाले सम्पन्न गराऊ ।

इन्द्र यस्ते नवीयसीं गिरं मन्द्रामजीजनत् ।
चिकित्विन्मनसं धियं प्रत्नामृतस्य पिप्युषीम् ॥५॥
हे इन्द्रदेव ! नयाँ आनन्ददायी स्तुतिले स्तुति गर्ने जुनसुकै साधकलाई तिमी सनातन यज्ञबाट उन्नतिशील मन र पवित्र गराउने बुद्धि प्रदान गर ।

तमु ष्टुवाम यं गिर इन्द्रमुक्थानि वावृधुः।
पुरूण्यस्य पौंस्या सिषासन्तो वनामहे॥६॥

महिमामन्त्र र स्तोत्र गाउँदै महान् पराक्रमी इन्द्रदेवलाई हामी भक्तिभावले स्तुति गर्दछौं।

एतो न्विन्द्रं स्तवाम शुद्धं शुद्धेन साम्ना।
शुद्धैरुक्थैर्वावृध्वांसं शुद्ध आशीर्वान्ममत्तु॥७॥

हे इन्द्रदेव ! तिमी चाँडै आऊ। शुद्ध रूपले उच्चरित साम र यजुर्वेदका मन्त्रले हामी तिम्रो स्तुति गर्दछौं। बलवर्द्धक, मन्त्रले शोधन गरेर गाईको दुध मिसाएका सोमरसले तिमीलाई आनन्द प्रदान गरोस्।

इन्द्र शुद्धो न आ गहि शुद्धः शुद्धाभिरूतिभिः।
शुद्धो रयिं नि धारय शुद्धो ममद्धि सोम्यः॥८॥

हे पवित्र इन्द्रदेव ! तिमी पवित्र भएर साधनसहित हाम्रा नजिकै आऊ, हामीलाई ऐश्वर्य प्रदान गर र सोमपान गर्दै खुसी होऊ।

इन्द्र शुद्धो हि नो रयिं शुद्धो रत्नानि दाशुषे।
शुद्धो वृत्राणि जिघ्नसे शुद्धो वाजं सिषाससि॥९॥

हे पवित्र इन्द्रदेव ! हामीलाई ऐश्वर्य प्रदान गर। उत्तम कर्ममा आउने विघ्न हटाइदेऊ। ऐश्वर्य प्रदान गर्नमा समर्थ तिमी हाम्रा मन्त्रले शुद्ध भएर शत्रुको विनाश गर।

[सूक्त – ९६]

**ऋषि** – तिरश्ची आङ्गिरस मारुत। **देवता** – इन्द्र मरुद्‌गण। **छन्द** – त्रिष्टुप् विराट्।

अस्मा उषास आतिरन्त याममिन्द्राय नक्तमूर्म्याः सुवाचः।
अस्मा आपो मातरः सप्त तस्थुर्नृभ्यस्तराय सिन्धवः सुपाराः॥१॥

इन्द्रदेवकै कारण उषाहरूले आफ्नो चाल तेज गराए। उनकै निम्ति रातका चारै प्रहरमा श्रेष्ठ प्रार्थना उच्चरित हुन्छन्। उनै इन्द्रदेवका कारण नै जलबाट सात मातृका प्रवाहित भएका छन् र सिन्धु मानिसका लागि सुगमतापूर्वक पार गर्न योग्य छ।

अतिविद्धा विथुरेणा चिदस्त्रा त्रिः सप्त सानु संहिता गिरीणाम्।
न तद्देवो न मर्त्यस्तुतुर्याद्यानि प्रवृद्धो वृषभश्चकार॥२॥

एकत्र भएका पहाडका एक्काइस चुचुरा कसैको सहायता विनै वज्रले नष्ट गराउने समृद्धिशाली र शक्तिशाली इन्द्रदेवले शौर्य प्रकट गरे। त्यस्तो गर्न कुनै अरू मानिस वा देवताले सक्दैन।

इन्द्रस्य वज्र आयसो निमिश्ल इन्द्रस्य बाह्वोर्भूयिष्ठमोजः।
शीर्षन्निन्द्रस्य क्रतवो निरेक आसन्नेषन्त श्रुत्या उपाके॥३॥

इन्द्रदेव कठोर वज्र बलिया हातले समाउँछन्। सङ्ग्राममा प्रस्थान गर्ने बेलामा शिरमा मुकुट लगाउँछन्। उनको आदेश सुन्न र मान्नका लागि सबै प्रजा उपस्थित हुन्छन्।

मन्ये त्वा यज्ञियं यज्ञियानां मन्ये त्वा च्यवनमच्युतानाम्।
मन्ये त्वा सत्वनामिन्द्र केतुं मन्ये त्वा वृषभं चर्षणीनाम्॥४॥

हे यज्ञमा सर्वाधिक पूज्य इन्द्रदेव ! च्युत नहुने, वज्रका प्रहारले पर्वत विदीर्ण गराउने र मानिसमा सबैभन्दा बढी बुद्धि भएका तिमी नै छौ भन्ने हामी मान्यता राख्दछौं।

आ यद्वज्रं बाह्वोरिन्द्र धत्से मदच्युतमहये हन्तवा उ।
प्र पर्वता अनवन्त प्र गावः प्र ब्रह्माणो अभिनक्षन्त इन्द्रम्॥५॥

हे इन्द्रदेव ! मदले चुर अहि नामको असुर संहार गर्नका लागि तिमीले हातमा वज्र उठाउँदा तिम्रा अगाडि पर्वत र गाई झुक्दछन् र विद्वान्हरू तिमीलाई प्रार्थना गर्दछन्।

तमु ष्टवाम य इमा जजान विश्वा जातान्यवराण्यस्मात्।
इन्द्रेण मित्रं दिधिषेम गीर्भिरुपो नमोभिर्वृषभं विशेम॥६॥

इन्द्रदेव सबै प्राणी उत्पन्न गर्दछन् र त्यसभन्दा पछि सारा संसार उत्पन्न भएको छ। ती शक्तिशालीलाई हामी प्रार्थनाले मित्र बनाउँछौं र नमस्कार गर्दै नजिकै बस्न जान्छौं।

वृत्रस्य त्वा श्वसथादीषमाणा विश्वे देवा आजहुर्ये सखायः।
मरुद्भिरिन्द्र सख्यं ते अस्त्वथेमा विश्वाः पृतना जयासि ॥७॥

हे इन्द्रदेव ! वृत्रासुरका डरले तिम्रा सबै सहायक देवता तिमीलाई छोडेर चारतिर भाग्दै थिए। त्यसपछि मरुत्‌हरूको सहयोग लिएर तिमीले शत्रुसेना परास्त गरायौ।

त्रिः षष्टिस्त्वा मरुतो वावृधाना उस्रा इव राशयो यज्ञियासः।
उप त्वेमः कृधि नो भागधेयं शुष्मं त एना हविषा विधेम ॥८॥

हे इन्द्रदेव ! त्रिसट्ठी मरुत्‌हरूले गोरुको बथानजस्तै एकत्रित भएर तिमीलाई समृद्ध बनाए। त्यसैबाट तिमी वन्दनीय भयौ। हामी तिम्रा आश्रयमा आउँछौं, त्यसैले हामीलाई सम्पत्ति प्रदान गर। हामी सोमको आहुति समर्पित गरेर तिम्रो सामर्थ्य बढाउँछौं।

तिग्ममायुधं मरुतामनीकं कस्त इन्द्र प्रति वज्रं दधर्ष।
अनायुधासो असुरा अदेवाश्चक्रेण ताँ अप वप ऋजीषिन् ॥९॥

हे इन्द्रदेव ! तीक्ष्ण हतियार, वज्र र मरुत्‌हरूले सम्पन्न तिम्रो सेना कुन शत्रुले रोक्न सक्ला र ? सोमले सम्पन्न हे इन्द्रदेव ! तिमी देवत्वरूपी हतियारविनाका राक्षसलाई आफ्ना चक्रले विनाश गर।

मह उग्राय तवसे सुवृक्तिं प्रेरय शिवतमाय पश्वः।
गिर्वाहसे गिर इन्द्राय पूर्वीर्धेहि तन्वे कुविदङ्ग वेदत् ॥१०॥

हे याजक हो ! पशु प्राप्त गर्नका लागि अत्यन्त शौर्यवान् र हितकारी इन्द्रदेवको प्रार्थना गर। प्रार्थनीय इन्द्रदेवलाई बारम्बार प्रार्थना गरौं। त्यसले गर्दा उनी हाम्रा सन्तानका लागि प्रचुर ऐश्वर्य प्रदान गर्छन्।

उक्थवाहसे विभ्वे मनीषां द्रुणा न पारमीरया नदीनाम्।
नि स्पृश धिया तन्वि श्रुतस्य जुष्टतरस्य कुविदङ्ग वेदत् ॥११॥

हे स्तोताहरू हो ! नाविकले नदी तारिदिएझैं तिमी आफ्ना स्तुतिलाई बुद्धिपूर्वक महान् इन्द्रदेवका लागि प्रेषित गर। उनै यशस्वी इन्द्रदेवले हामीलाई र हाम्रा सन्तानलाई प्रचुर ऐश्वर्य प्रदान गरुन्।

तद्विविड्ढि यत्त इन्द्रो जुजोषत्स्तुहि सुष्टुतिं नमसा विवास।
उप भूष जरितर्मा रुवण्यः श्रावया वाचं कुविदङ्ग वेदत् ॥१२॥

हे स्तोताहरू हो ! तिमीहरू इन्द्रदेवका लागि श्रेष्ठ प्रार्थना गर। तिमीहरू उनको इच्छाअनुसारका प्रार्थना गर। आफ्नो गरिबीका लागि विलाप नगर। बरु पवित्र मनले उनको प्रार्थना गर। उनले तिमीहरूलाई प्रचुर ऐश्वर्य प्रदान गर्नेछन्।

अव द्रप्सो अंशुमतीमतिष्ठदियानः कृष्णो दशभिः सहस्रैः।
आवत्तमिन्द्रः शच्या धमन्तमप स्नेहितीर्नृमणा अधत्त ॥१३॥

चाँडो गति भएका, दस हजार सैनिक लिएर आक्रमण गर्ने, सम्पूर्ण संसारलाई सताउने, अंशुमती नदीका किनारमा रहेको कृष्णासुरमाथि सबैका प्रिय इन्द्रदेवले प्रत्याक्रमण गरेर शत्रुसेनालाई पराजित गराए।

द्रप्समपश्यं विषुणे चरन्तमुपह्वरे नद्यो अंशुमत्याः।
नभो न कृष्णमवतस्थिवांसमिष्यामि वो वृषणो युध्यताजौ ॥१४॥

अंशुमती नदीका किनारका गुफाहरूमा घुमिरहने कृष्णासुरलाई मैले सूर्यजस्तैं स्पष्ट देखेका छु। हे शक्तिशाली मरुत्‌हरू हो ! म तिमीहरूका सहयोगको आशा गर्दछु। तिमीहरू सङ्ग्राममा त्यसको संहार गर भन्ने कुरो इन्द्रदेवले गरे।

अध द्रप्सो अंशुमत्या उपस्थेऽधारयत्तन्वं तित्विषाणः।
विशो अदेवीरभ्याचरन्तीर्बृहस्पतिना युजेन्द्रः ससाहे ॥१५॥

अंशुमती नदीका किनारमा शीघ्रगामी कृष्णासुर तेजले सम्पन्न भएर बस्ने गरेको छ। इन्द्रदेवले बृहस्पतिदेवको सहायताले सबै तिरबाट आक्रमण गर्नका लागि आइरहेका उसका सेनालाई परास्त गरे।

त्वं ह त्यत्सप्तभ्यो जायमानोऽशत्रुभ्यो अभवः शत्रुरिन्द्र।
गूळ्हे द्यावापृथिवी अन्वविन्दो विभुमद्भ्यो भुवनेभ्यो रणं धाः ॥१६॥

हे अजातशत्रु इन्द्रदेव ! वृत्र आदि सात राक्षस उत्पन्न हुनासाथ तिमी उनीहरूका शत्रु भइहाल्यौ। द्युलोक र पृथ्वीलाई अन्धकारबाट उद्धार गरी प्रकाशित गरायौ। तिमीले नै यी लोकलाई राम्रोसित स्थिर गराएर ऐश्वर्यवान् र सौन्दर्यशाली बनाएका छौ।

त्वं ह त्यदप्रतिमानमोजो वज्रेण वज्रिन्धृषितो जघन्थ।
त्वं शुष्णस्यावातिरो वधत्रैस्त्वं गा इन्द्र शच्येदविन्दः ॥१७॥

वज्रधारी, शत्रु दमन गर्ने हे इन्द्रदेव ! असीमित शक्ति भएका शुष्णासुरलाई तिमीले वज्रले विनाश गर्‍यौ। राजर्षि कुत्सका निम्ति त्यसलाई आफ्नै हतियारले काट्यौ र आफ्ना बलले गाई प्रकट गरायौ।

त्वं ह त्यद्वृषभ चर्षणीनां घनो वृत्राणां तविषो बभूथ।
त्वं सिन्धूँरसृजस्तस्तभानान् त्वमपो अजयो दासपत्नीः ॥१८॥

मानिसहरूमा समर्थ हे इन्द्रदेव ! शक्तिशाली शत्रु संहार गरेर तिमी नै बलशाली भयौ। रोकिएका सरिता तिमीले प्रवाहित गरायौ र दस्युबाट नियन्त्रित जलप्रवाह आफ्ना अधिकारमा गरायौ।

स सुक्रतू रणिता यः सुतेष्वनुत्तमन्युर्यो अहेव रेवान्।
य एक इन्नर्यपांसि कर्ता स वृत्रहा प्रतीदन्यमाहुः ॥१९॥

सत्कर्म गर्ने इन्द्रदेव सोमयागमा आनन्दित हुन्छन्। मानिसका युद्धमा उनी एक्लै वृत्र र अन्य शत्रु संहार गर्दछन्। उनी दिनभैँ ऐश्वर्यवान् भएर अत्यधिक रिस प्रकट गर्दछन्।

स वृत्रहेन्द्रश्चर्षणीधृत्तं सुष्टुत्या हव्यं हुवेम।
स प्राविता मघवा नोऽधिवक्ता स वाजस्य श्रवस्यस्य दाता ॥२०॥

वृत्र संहार गर्ने र मानिसलाई पालन गर्ने इन्द्रदेव आह्वान गर्न योग्य हुनाले हामी आफ्ना प्रार्थनाले बोलाउँछौं। संरक्षक, नियन्त्रक र धनवान् इन्द्रदेवले अन्न प्रदान गर्दछन्।

स वृत्रहेन्द्र ऋभुक्षाः सद्यो जज्ञानो हव्यो बभूव।
कृण्वन्नपांसि नर्या पुरूणि सोमो न पीतो हव्यः सखिभ्यः ॥२१॥

शिल्पकारसँग निवास गर्ने र वृत्र संहार गर्ने इन्द्रदेव प्रकट हुनासाथ आह्वान गर्न योग्य भए। अनेकौं व्यक्तिका निमित्त कल्याणकारी कर्म गरेर ती इन्द्रदेव पान गरिने सोमरस जस्तै सखाहरूद्वारा स्वीकार गर्न योग्य भए।

## [सूक्त - ९७]

**ऋषि** - रेभ काश्यप। **देवता** - इन्द्र। **छन्द** - वृहती त्रिष्टुप् जगती।

या इन्द्र भुज आभरः स्वर्वां असुरेभ्यः।
स्तोतारमिन्मघवन्नस्य वर्धय ये च त्वे वृक्तबर्हिषः ॥१॥

आत्मशक्तिसम्पन्न हे इन्द्रदेव ! तिमी राक्षसलाई जितेर ल्याएको धनले स्तोताको संरक्षण गर। जसले तिमीलाई आह्वान गर्दछन्, तिनको उन्नति गराऊ।

यमिन्द्र दधिषे त्वमश्वं गां भागमव्ययम्।
यजमाने सुन्वति दक्षिणावति तस्मिन् तं धेहि मा पणौ ॥२॥

हे इन्द्रदेव ! तिमीसित भएका गाई, अश्व, अविनाशी ऐश्वर्य सबै सोमयाग गर्ने र दक्षिणा गर्ने याजकलाई प्रदान गर। कमाएर जम्मा पार्ने कृपणलाई त्यो धन नदेऊ।

य इन्द्र सस्त्यव्रतोऽनुष्वापमदेवयुः।
स्वैः ष एवैर्मुमुरत्पोष्यं रयिं सनुतर्धेहि तं ततः ॥३॥

हे इन्द्रदेव ! कुमार्गगामी व्यक्तिले आफ्ना कर्तव्यमा ध्यान दिँदैन। त्यसले आफ्नै आचरणले आफ्नै ऐश्वर्य नाश गर्दछ। त्यस्ताको ऐश्वर्य लुकाएर हामीलाई देऊ।

यच्छक्रासि परावति यदर्वावति वृत्रहन्।
अतस्त्वा गीर्भिर्द्युगदिन्द्र केशिभिः सुतावाँ आ विवासति ॥४॥

सामर्थ्यवान्, वृत्रहन्ता हे इन्द्रदेव ! तिमी टाढा वा नजिक जहाँ भए पनि श्रेष्ठ घोडाभैँ वेगवान् स्तुतिले सोमयज्ञमा आऊ भनेर याजकहरू तिमीलाई आह्वान गर्दछन्।

यद्वासि रोचने दिवः समुद्रस्याधि विष्टपि।
यत्पार्थिवे सदने वृत्रहन्तम यदन्तरिक्ष आ गहि ॥५॥

सर्वश्रेष्ठ वृत्रसंहारकर्ता सामर्थ्यवान् हे इन्द्रदेव ! दिव्यलोकका आलोकित स्थानमा, समुद्रका भूमि, भूमि वा अन्तरिक्षमा, जहाँ भए पनि हामीकहाँ तिमी आऊ।

स नः सोमेषु सोमपाः सुतेषु शवसस्पते।
मादयस्व राधसा सूनृतावतेन्द्र राया परीणसा ॥६॥

सामर्थ्यका स्वामी हे इन्द्रदेव ! तिमी सोमरस पान गर्दछौ। सोमरस संस्कारित भएपछि हामीलाई मधुर वचनले सम्पन्न प्रचुर ऐश्वर्य प्रदान गरेर खुसी गराऊ।

मा न इन्द्र परा वृणग्भवा नः सधमाद्यः।
त्वं उ ऊती त्वमिन्न आप्यं मा न इन्द्र परा वृणक् ॥७॥

हे हाम्रा रक्षक र बन्धु इन्द्रदेव ! हाम्रा यज्ञमा आऊ। हामीलाई कहिल्यै पर नपार।

अस्मे इन्द्र सचा सुते नि षदा पीतये मधु।
कृधी जरित्रे मघवन्नवो महदस्मे इन्द्र सचा सुते ॥८॥

हे इन्द्रदेव ! हाम्रा यज्ञमण्डपमा मधुर सोमरस पान गर्नका लागि सँगै बस। हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमी स्तोतालाई महान् संरक्षण प्रदान गर।

न त्वा देवास आशत न मर्त्यासो अद्रिवः।
विश्वा जातानि शवसाभिभूरसि न त्वा देवास आशत ॥९॥

वज्र धारण गर्ने हे इन्द्रदेव ! कुनै मानिस वा देवता तिम्रो बराबरी गर्न सक्ने छैनन्। तिमी आफ्ना शक्तिले समस्त प्राणीलाई परास्त गर्दछौ।

विश्वाः पृतना अभिभूतरं नरं सजूस्ततक्षुरिन्द्रं जजनुश्च राजसे।
क्रत्वा वरिष्ठं वर आमुरिमुतोग्रमोजिष्ठं तवसं तरस्विनम् ॥१०॥

ऋत्विक्हरू यज्ञमा मिलेर सेनानायक, पराक्रमी सङ्गठित सेनाले युक्त शस्त्रास्त्र धारण गर्ने इन्द्रदेवलाई प्रकट गर्दछन्। हामी वृत्रहन्ता, उग्र, महिमाशाली, तीव्र गतिले कार्य गर्ने इन्द्रदेवको स्तुति गर्दछौं।

समी रेभासो अस्वरन्निन्द्रं सोमस्य पीतये।
स्वर्पतिं यदीं वृधे धृतव्रतो ह्योजसा समूतिभिः ॥११॥

रेभ ऋषिले सोमपानका लागि इन्द्रदेवको स्तुति गरे। देवलोकका स्वामी, बल र वैभव सम्पन्न इन्द्रदेवको वन्दना गर्दा व्रतधारी ओज एवं संरक्षणसाधनले युक्त हुन्छन्।

नेमिं नमन्ति चक्षसा मेषं विप्रा अभिस्वरा।
सुदीतयो वो अद्रुहोऽपि कर्णे तरस्विनः समृक्वभिः ॥१२॥

नम्र स्वभाव भएका विद्वान्हरू नेत्र र वाणीले इन्द्रदेवलाई नमस्कार गर्दछन्। कसैसित द्रोह नगर्ने हे श्रेष्ठ, तेजस्वी स्तोता हो ! तिमीहरू पनि इन्द्रदेवका कानले छ्याउने ऋचाले उनको स्तुति गर।

तमिन्द्रं जोहवीमि मघवानमुग्रं सत्रा दधानमप्रतिष्कुतं शवांसि।
मंहिष्ठो गीर्भिरा च यज्ञियो ववर्तद्राये नो विश्वा सुपथा कृणोतु वज्री ॥१३॥

धनवान्, वीर, महाबलशाली, अपराजेय इन्द्रदेवलाई हामी सहायताका लागि आह्वान गर्दछौं। सबैभन्दा महान्, यज्ञमा पूज्य इन्द्रदेवलाई स्तोत्रले प्रार्थना गर्दछौं। वज्रधारी इन्द्रदेवले ऐश्वर्य प्राप्तिका लागि हाम्रा सबै मार्ग सुलभ बनाऊन्।

त्वं पुर इन्द्र चिकिदेना व्योजसा शविष्ठ शक्र नाशयध्यै।
त्वद्विश्वानि भुवनानि वज्रिन् द्यावा रेजेते पृथिवी च भीषा ॥१४॥

हे शक्तिशाली इन्द्रदेव ! आफ्ना ओजले शत्रुको समस्त सहर ध्वस्त गराउन जान्दछौ। वज्र धारण गर्ने हे इन्द्रदेव ! तिम्रा डरले सबै लोक र द्यावापृथिवी प्रकम्पित हुन्छन्।

तन्म ऋतमिन्द्र शूर चित्र पात्वपो न वज्रिन्दुरिताति पर्षि भूरि।
कदा न इन्द्र राय आ दशस्येर्विश्वप्स्न्यस्य स्पृहयाय्यस्य राजन् ॥१५॥

शूरवीर र अद्भुत तेजस्वी हे इन्द्रदेव ! तिमी आफ्ना सत्यले हाम्रो संरक्षण गर। हे वज्रधारी इन्द्रदेव ! नाविकले नदीपार पार लगाइदिएझैं पाप र आपद्बाट हामीलाई पार लगाऊ। हामीलाई विभिन्न रूपका वाञ्छित ऐश्वर्य कहिले प्रदान गर्दछौ ?

[सूक्त – ९८]

ऋषि – नृमेध आङ्गिरस। देवता – इन्द्र। छन्द – उष्णिक् ककुप् उष्णिक्।

**इन्द्राय साम गायत विप्राय बृहते बृहत्। धर्मकृते विपश्चिते पनस्यवे ॥१॥**

हे उद्गाता हो ! विवेकसम्पन्न, महान्, स्तुत्य, ज्ञानवान् इन्द्रदेवका लागि बृहत साम गायन गर।

**त्वमिन्द्राभिभूरसि त्वं सूर्यमरोचयः। विश्वकर्मा विश्वदेवो महाँ असि ॥२॥**

सूर्यलाई प्रकाशित गराउने, दुष्टदुराचारीलई पराजित गर्ने हे इन्द्रदेव ! तिमी विश्वकर्मा र विश्वका प्रकाशक हौ, महान् छौ।

**विभ्राजञ्ज्योतिषा स्व१रगच्छो रोचनं दिवः। देवास्त इन्द्र सख्याय येमिरे ॥३॥**

आपनो तेज विस्तार गर्दै सूर्यलाई प्रकाशित गराउने हे इन्द्रदेव ! तिमी आऊ, सबै देवता तिमीसित मित्रतापूर्वक सम्पर्क स्थापित गर्न खोज्दछन्।

**एन्द्र नो गधि प्रियः सत्राजिदगोह्यः। गिरिर्न विश्वतस्पृथुः पतिर्दिवः ॥४॥**

सबैका प्रिय, शत्रु जित्ने, अपराजेय हे इन्द्रदेव ! तिमी पर्वतजस्तै विशाल, द्युलोकका अधिपति हौ, हामीसित आऊ।

**अभि हि सत्य सोमपा उभे बभूथ रोदसी। इन्द्रासि सुन्वतो वृधः पतिर्दिवः ॥५**

सत्यका पालक, सोमपान गर्ने हे इन्द्रदेव ! आकाश र पृथ्वी दुवैलाई आपना प्रभावमा लिन समर्थ छौ। हे द्युलोकका स्वामी ! तिमी सोमयाग कर्तालाई उन्नति प्रदान गर्दछौ।

**त्वं हि शश्वतीनामिन्द्र दर्ता पुरामसि। हन्ता दस्योर्मनोर्वृधः पतिर्दिवः ॥६॥**

हे इन्द्रदेव ! तिमी दुष्टका अविनाशी पुर नाश गर्ने, अज्ञान मेटाउने, यज्ञकर्ता, मानिसको मनोबल बढाउने र प्रकाशलोकका स्वामी हौ।

**अधा हीन्द्र गिर्वण उप त्वा कामान्महे ससृज्महे। उदेव यन्त उदभिः ॥७॥**

स्तोत्रले पूजित हे इन्द्रदेव ! हामी निकै ठूलो कामना लिएर पानी पानीकै समूहरित बगेर गएझैं तिमीकहाँ आउँछौं।

**वार्ण त्वा यव्याभिर्वर्धन्ति शूर ब्रह्माणि। वावृध्वांसं चिदद्रिवो दिवेदिवे ॥८॥**

वज्र धारण गर्ने, शूरवीर हे इन्द्रदेव ! नदीका जलले समुद्रको गरिमा बढाएझैं हामी आपना स्तुतिले तिम्रो गरिमा बढाउँछौं।

**युञ्जन्ति हरी इषिरस्य गाथयोरौ रथ उरुयुगे। इन्द्रवाहा वचोयुजा ॥९॥**

गमनशील इन्द्रदेवका महान् रथमा आदेश मात्रैले दुई चटा अश्व नारिन्छन्। स्तोताहरू तिनलाई स्तोत्रले नार्दछन्।

**त्वं न इन्द्रा भरँ ओजो नृम्णं शतक्रतो विचर्षणे। आ वीरं पृतनाषहम् ॥१०॥**

अनेकौं कार्य गर्ने, ज्ञानी हे इन्द्रदेव ! हामीलाई शक्ति एवं ऐश्वर्यले परिपूर्ण गराऊ र शत्रु जित्ने पुत्र पनि प्रदान गर।

**त्वं हि नः पिता वसो त्वं माता शतक्रतो बभूविथ। अधा ते सुम्नमीमहे ॥११॥**

सबैलाई आश्रय दिने, सयौं खालका कर्म गर्ने हे इन्द्रदेव ! तिमी पिताजस्तै पालन गर्ने र माताजस्तै धारण गर्ने हौ। तिमीसित हामी सुख माग्नका लागि आउँछौं।

**त्वां शुष्मिन् पुरुहूत वाजयन्तमुप ब्रुवे शतक्रतो। स नो रास्व सुवीर्यम् ॥१२॥**

असङ्ख्य तिरबाट स्तुत्य, बलवान्, प्रशंसित, शक्तिशाली हे इन्द्रदेव ! तिम्रो स्तुति गर्दै हामीलाई उत्तम, तेजस्वी सामर्थ्य प्रदान गर भन्ने कामना गर्दछौं।

[सूक्त – ९९]

ऋषि – नृमेध आङ्गिरस। देवता – इन्द्र। छन्द – प्रगाथ।

**त्वामिदा ह्यो नरोऽपीप्यनवज्रिन्भूर्णयः।**
**स इन्द्र स्तोमवाहासामिह श्रुध्युप स्वसरमा गहि ॥१॥**

याजकले प्रदान गरेको सोमरस निरन्तर सेवन गर्ने वज्रधारी हे इन्द्रदेव ! तिमी ऋत्विकहरूले उच्चारण गरेका स्तोत्र सुन्दै यज्ञस्थलमा आऊ।

**मत्स्वा सुशिप्र हरिवस्तदीमहे त्वे आ भूषन्ति वेधसः।**
**तव श्रवांस्युपमान्युक्थ्या सुतेष्विन्द्र गिर्वणः ॥२॥**

शिरमा मुकुट धारण गर्ने, अश्वपालक, स्तुतिका लागि योग्य हे इन्द्रदेव ! तिम्रो पूजा गर्नेहरू विभिन्न सामग्रीले तिमीलाई सजाउँछन्। तिमी सोमरसले तृप्त होऊ। हे स्तुति योग्य इन्द्रदेव ! सोमभन्दा पछि तिम्रो अनुकूल अन्न पनि तिमीलाई प्रदान गरिन्छ।

**श्रायन्तइव सूर्यं विश्वेदिन्द्रस्य भक्षत।**
**वसूनि जाते जनमान ओजसा प्रति भागं न दीधिम ॥३॥**

सूर्यको आश्रयमा किरण रहेझैं इन्द्रदेव सम्पूर्ण संसारका आश्रयदाता हुन्। पिताबाट पुत्रले पाउने धनको भागजस्तै इन्द्रदेवसित हामी आफ्ना भागको कामना गर्दछौं। किनभने जन्म लिएका र जन्म लिनेहरूलाई उनले आआफ्नो भाग प्रदान गर्दछन्।

**अनर्शरातिं वसुदामुप स्तुहि भद्रा इन्द्रस्य रातयः।**
**सो अस्य कामं विधतो न रोषति मनो दानाय चोदयन् ॥४॥**

हे स्तोता हो ! सात्विक पुरुषलाई धन आदि दान गर्ने इन्द्रदेवको स्तुति गर। किनभने उनको दान कल्याणकारी र प्रेरणा प्रदान गर्ने हुन्छ। इन्द्रदेव आफ्ना मनको अनुकूल फल दिनका लागि प्रेरणा दिंदा उपासकहरूको कामना नष्ट गर्दैनन्।

**त्वमिन्द्र प्रतूर्तिष्वभि विश्वा असि स्पृधः।**
**अशस्तिहा जनिता विश्वतूरसि त्वं तूर्य तरुष्यतः ॥५॥**

हे इन्द्रदेव ! तिमी सङ्ग्राममा शत्रुलाई पराजित गर्दछौ। सबैका जन्मदाता तिमी पान नगर्ने र असुर नष्ट गर्दछौ।

**अनु ते शुष्मं तुरयन्तमीयतुः क्षोणी शिशुं न मातरा।**
**विश्वास्ते स्पृधः श्नथयन्त मन्यवे वृत्रं यदिन्द्र तूर्वसि ॥६॥**

हे इन्द्रदेव ! आफ्ना शिशुको रक्षा गर्नका लागि मातापिता तत्पर रहेझैं आकाश र पृथ्वी उसै गरी तिम्रा बलका अनुगामी हुन्छन्। तिमीले वृत्रासुरको वध गर्दा तिम्रा क्रोधका अगाडि युद्धका लागि तयार भएका शत्रुपक्षका सबै कमजोर हुन थाल्दछन्।

**इत ऊती वो अजरं प्रहेतारमप्रहितम्।**
**आशुं जेतारं हेतारं रथीतममतूर्तं तुग्र्यावृधम् ॥७॥**

हे साधक हो ! आफ्नो संरक्षणका लागि, शत्रुको संहार गर्ने, सर्वप्रेरक, वेगवान, यज्ञस्थलमा जाने, उत्तम रथी, अहिंसनीय, जलवर्षा गराउने र अजरअमर इन्द्रदेवलाई आह्वान गर।

**इष्कर्तारमनिष्कृतं सहस्कृतं शतमूतिं शतक्रतुम्।**
**समानमिन्द्रमवसे हवामहे वसवानं वसूजुवम् ॥८॥**

आफ्नो सुरक्षाका लागि, शत्रु संहार गर्ने, सबै यज्ञ आदि असल कर्म गर्ने, अनेकौं किसिमले संरक्षण प्रदान गर्ने सधैं समान भावमा रहने, संसार ढाकेर बसेका र ऐश्वर्य प्रदान गर्ने इन्द्रदेवलाई हामी आह्वान गर्दछौं।

[सूक्त - १००]

**ऋषि** - नेम भार्गव इन्द्र। **देवता** - इन्द्र वाक्। **छन्द** - त्रिष्टुप् जगती अनुष्टुप्।

**अयं त एमि तन्वा पुरस्ताद्विश्वे देवा अभि मा यन्ति पश्चात्।**
**यदा मह्यं दीधरो भागमिन्द्रादिन्मया कृणवो वीर्याणि ॥१॥**

हे इन्द्रदेव ! शत्रुमाथि विजय प्राप्त गर्नका लागि हामी तिम्रा अघिअघि हिंड्दछौं र समस्त देवता हाम्रा पछिपछि लाग्नेछन्। हामीलाई शौर्य र ऐश्वर्य आदि भोग्य पदार्थ प्रदान गर।

**दधामि ते मधुनो भक्षमग्रे हितस्ते भागः सुतो अस्तु सोमः।**
**असश्च त्वं दक्षिणतः सखा तेऽधा वृत्राणि जङ्घनाव भूरि ॥२॥**

हे इन्द्रदेव ! निचोरेर तयार गरेको सोमरस तिम्रा लागि उचित किसिमले राखिएको छ। त्यस सोमको भाग हामी तिम्रा अगाडि प्रस्तुत गर्दछौं। तिमी हाम्रा सखा या दाहिने हातजस्तै भइदेऊ। त्यसो हुँदा तिमी र हामी मिलेर अनेकौं असुर संहार गर्न सक्नेछौं।

प्र सु स्तोमं भरत वाजयन्त इन्द्राय सत्यं यदि सत्यमस्ति।
नेन्द्रो अस्तीति नेम उ त्व आह क ईं ददर्श कमभि ष्टवाम ॥३॥

शक्तिको आकाङ्क्षा भएका हे मानिस हो ! वास्तवमा यदि इन्द्रदेव शक्तिशाली हुन् भनेदेखि उनका निमित्त यथार्थ रूपमा प्रार्थना गर। भृगुवंशी नेम ऋषि इन्द्रदेव नामको कोही पनि छैन, यदि छ भने उसलाई कसले देखेको छ ? हामीले कसको प्रार्थना गर्ने ? भन्दछन्।

अयमस्मि जरितः पश्य मेह विश्वा जातन्यभ्यस्मि मह्ना।
ऋतस्य मा प्रदिशो वर्धयन्त्यादर्दिरो भुवना दर्दरीमि ॥४॥

हे स्तोता हो ! हामी तिम्रा नजिकै छौं। हामी आफ्नो महिमाले समस्त जीवलाई परास्त गर्दछौं सत्यका दिशाले हामीलाई समृद्ध गर्दछ। शत्रुलाई विदीर्ण गराउने, हामी समस्त लोकलाई विनष्ट गर्न सक्दछौं।

आ यन्मा वेना अरुहन्नृतस्यँ एकमासीनं हर्यतस्य पृष्ठे।
मनश्चिन्मे हृद आ प्रत्यवोचदचिक्रदञ्छिशुमन्तः सखायः ॥५॥

यज्ञको अभिलाषा गर्नेहरूले हामीलाई एक्लै यज्ञका बीचमा आसीन गराएका बेला उनीहरूका मनले हाम्रा हृदयमा हामी सन्तान युक्त, सखारूप भएर तिम्रो आह्वान गर्दछौं भनिरहेको छ।

विश्वेत्ता ते सवनेषु प्रवाच्या या चकर्थ मघवन्निन्द्र सुन्वते।
पारावतं यत्पुरुसम्भृतं वस्वपावृणोः शरभाय ऋषिबन्धवे ॥६॥

हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमीले आफ्ना भ्रातारूपी शरभ ऋषिका लागि पारावतको प्रचुर ऐश्वर्य आफ्नो अधिकारमा लियौ। सोम अभिषव गर्नेहरूलाई तिमीले जुन ऐश्वर्य प्रदान गरेका छौ, त्यो सबै तिम्रो प्रशंसनीय कार्य हो।

प्र नूनं धावता पृथङ्नेह यो वो अवावरीत्।
नि षीं वृत्रस्य मर्मणि वज्रमिन्द्रो अपीपतत् ॥७॥

हे पराक्रमी हो ! उनै इन्द्रदेवले वृत्रको मर्मस्थलमा वज्र प्रहार गरिदिएका छन्। त्यसैले निश्चित रूपले अब तिमीहरू सबै शत्रुमाथि आक्रमण गर। किनभने तिमीहरूलाई रोक्न सक्ने अब कुनै पनि योद्धा नै छैन।

मनोजवा अयमान आयसीमतरत्पुरम्।
दिवं सुपर्णो गत्वाय सोमं वज्रिण आभरत् ॥८॥

मनजस्तो वेग हुने गरुडले फलामे सहर पार गर्दै दिव्यलोकमा पुगेर वज्रधारी इन्द्रदेवका निम्ति सोमरस लिएर आऊन्।

समुद्रे अन्तः शयत उद्ना वज्रो अभिवृतः।
भरन्त्यस्मै संयतः पुरःप्रस्रवणा बलिम् ॥९॥

इन्द्रदेवको वज्र पानीले छोपिएर समुद्रका बीचमा रहने गर्दछ। युद्धको इच्छा गर्ने शत्रुले त्यस वज्रका लागि आफ्नो बलि चढाउँछन्।

यद्वाग् वदन्त्यविचेतनानि राष्ट्री देवानां निषसाद मन्द्रा।
चतस्र ऊर्जं दुदुहे पयांसि क्व स्विदस्याः परमं जगाम ॥१०॥

अज्ञानीलाई ज्ञानले सम्पन्न बनाउने र विद्वान्हरूलाई आनन्दित गराउने वाणी यज्ञमा प्रकट हुँदा चारै दिशामा अन्न र जलको दोहन हुन्छ। यो दिव्य वाणी कुन स्थानबाट प्रकट भएको हो भन्ने केही पत्तो छैन।

देवीं वाचमजनयन्त देवास्तां विश्वरूपाः पशवो वदन्ति।
सा नो मन्द्रेषमूर्जं दुहाना धेनुर्वागस्मानुप सुष्टुतैतु ॥११॥

देवताहरूले जुन दिव्य वाणी उत्पन्न गरे, विभिन्न किसिमका पशुले त्यसको उच्चारण गर्दछन्। अन्न र बल प्रदान गर्ने तथा गाईजस्तै हर्ष प्रदान गर्ने यो वाणीलाई हामी राम्रोसित स्तुति गर्छौं। त्यो हामीसित आओस्।

सखे विष्णो वितरं वि क्रमस्व द्यौर्देहि लोकं वज्राय विष्कभे।
हनाव वृत्रं रिणचाव सिन्धूनिन्द्रस्य यन्तु प्रसवे विसृष्टाः ॥१२॥

हे सखा विष्णुदेव ! अत्यधिक पराक्रम प्रकट गर। हे द्युलोक ! हाम्रो वज्रको गतिका लागि विस्तृत

स्थान प्रदान गर। हे विष्णुदेव ! तिमी र हामी सँगसँगै भएर वृत्र संहार गरौं र जल प्रवाहित गरौं। त्यो जल मुक्त भएर इन्द्रदेवको आदेशले प्रवाहित होस्।

[सूक्त - १०१]

**ऋषि** - जमदग्नि भार्गव। **देवता** - वायु सूर्य उषा। **छन्द** - प्रगाथ बृहती त्रिष्टुप्।

**ऋधगित्था स मर्त्यः शशमे देवतातये।**
**यो नूनं मित्रावरुणावभिष्टय आचक्रे हव्यदातये ॥१॥**

मित्रावरुणलाई आफ्नो कामना पूरा गर्नका लागि आहुति प्रदान गर्ने व्यक्तिहरू यथार्थ रूपमा देवतालाई हर्षित गराउनका लागि आहुति प्रदान गर्दछन्।

**वर्षिष्ठक्षत्रा उरुचक्षसा नरा राजाना दीर्घश्रुत्तमा।**
**ता बाहुता न दंसना रथर्यतः साकं सूर्यस्य रश्मिभिः ॥२॥**

मित्रावरुण अत्यन्त शक्तिसम्पन्न, तेजसम्पन्न, श्रेष्ठ नायक, विराट् दृष्टिले सम्पन्न र महान् मेधावी छन्। उनी आफ्ना दुई बाहुजस्ता सूर्यका रश्मिसँग यज्ञमा आउने गर्दछन्।

**प्र यो वां मित्रावरुणाजिरो दूतो अद्रवत्। अयःशीर्षा मदेरघुः ॥३॥**

हे मित्रावरुण हो ! सेवा गर्नका लागि दूतका रूपमा तिम्रा नजिक आउने यजमानको शिर सुनले अलङ्कृत हुन्छ र उनले हर्ष प्रदायक धन प्राप्त गर्दछन्।

**न यः संपृच्छे न पुनर्हवीतवे न संवादाय रमते।**
**तस्मान्नो अद्य समृतेरुष्यतं बाहुभ्यां न उरुष्यतम् ॥४॥**

हे मित्रावरुण हो ! कुनै प्रश्नमा रुचि नलिने, यज्ञकर्म र श्रेष्ठ भाषणले हर्षित नहुने व्यक्तिसित भएका युद्धमा आफ्नो बाहुबलले हामीलाई रक्षा गर।

**प्र मित्राय प्रार्यम्णे सचथ्यमृतावसो।**
**वरूथ्यं वरुणे छन्द्यं वचः स्तोत्रं राजसु गायत ॥५॥**

हे परमार्थी याज्ञिक हो ! मित्र, वरुण, अर्यमादेव यज्ञशालामा प्रतिष्ठित भइसकेपछि छन्दोबद्ध र गाउन योग्य स्तोत्रले उनीहरूको प्रार्थना गर।

**ते हिन्विरे अरुणं जेन्यं वस्वेकं पुत्रं तिसृणाम्।**
**ते धामान्यमृता मर्त्यानामदब्धा अभि चक्षते ॥६॥**

मित्रावरुणदेव राता रङ्गका, सूर्यजस्तै ओजस्वी, विजय प्राप्त गराउने र सबैलाई निवास प्रदान गर्ने बनेर तीनै लोकका एक्ला पुत्र सूर्यलाई उदाउन प्रेरित गर्दछन्। आलस्यरहित अविनाशी देवताहरू मानिसका ठाउँको हेरचाह गर्दछन्।

**आ मे वचांस्युद्यता द्युमत्तमानि कर्त्वा।**
**उभा यातं नासत्या सजोषसा प्रति हव्यानि वीतये ॥७॥**

सत्य पालन गर्ने हे अश्विनीकुमार हो ! हामीले उच्चारण गरेका वाणीका नजिकै हवि सेवन गर्नका लागि आओ।

**रातिं यद्वामरक्षसं हवामहे युवाभ्यां वाजिनीवसू।**
**प्राची होत्रां प्रतिरन्तावितं नरा गृणाना जमदग्निना ॥८॥**

धनधान्यले सम्पन्न हे अश्विनीकुमार हो ! तिमीहरू दुवैका नीतियुक्त दानको कामना हामी गर्दछौं। जमदग्नि ऋषिबाट स्तुत्य भएर उनको प्राचीन स्तुति समृद्ध गर्दै आओ।

**आ नो यज्ञं दिविस्पृशं वायो याहि सुमन्मभिः।**
**अन्तः पवित्र उपरि श्रीणानोऽयं शुक्रो अयामि ते ॥९॥**

हे वायु हो ! राम्ररी पेलेको पवित्र सोमरस हामी प्रदान गर्दछौं। दिव्यलोक स्पर्श गर्ने हाम्रो यस यज्ञमा श्रेष्ठ स्तोत्रका नजिकै तिमीहरू आओ।

**वेत्यध्वर्युः पथिभी रजिष्ठैः प्रति हव्यानि वीतये।**
**अधा नियुत्व उभयस्य नः पिब शुचिं सोमं गवाशिरम् ॥१०॥**

हे वायु ! तिमीले सेवन गर्नका लागि सरल मार्गबाट याजकहरू आहुति ल्याउँछन्। तिमीहरू शुद्ध र गाईको दुध मिसिएको हाम्रो दुवै तिरको सोमरस पान गर।

बण्महाँ असि सूर्य बडादित्य महाँ असि।
महस्ते सतो महिमा पनस्यतेऽद्धा देव महाँ असि ॥११॥

प्रेरक, अदितिपुत्र हे इन्द्रदेव ! तिमी महान् तेजस्वी छौ भन्ने कुरो निश्चित छ। हे देव ! तिमी महान् शक्तिशाली पनि छौ। तिम्रो महानताको गुणगान हामी गर्दछौँ।

बट् सूर्य श्रवसा महाँ असि सत्रा देव महाँ असि।
मह्ना देवानामसुर्यः पुरोहितो विभु ज्योतिरदाभ्यम् ॥१२॥

हे सूर्यदेव ! तिमी आफ्नो यशका कारण महान् छौ। देवताका बीचमा विशेष महत्त्वका कारण तिमी महान् छौ। तिमी अन्धकाररूपी असुर नाश गर्दछौ। पुरोहितजस्तै बनेर देवताको नेतृत्व गर्दछौ। तिम्रो तेज अदम्य, सर्वव्यापी र अविनाशी छ।

इयं या नीच्यर्किणी रूपा रोहिण्या कृता।
चित्रेव प्रत्यदर्श्यायत्यन्तर्दशसु बाहुषु ॥१३॥

सौन्दर्ययुक्त उषादेवी उँधोतिर फर्किएका सूर्यका प्रतापले उत्पन्न भइन्। विश्वका दसै दिशाबाट आउने उनी पाङ्ग्रे गाईभैँ राम्री छन्।

प्रजा ह तिस्रो अत्यायमीयुर्न्यन्या अर्कमभितो विविश्रे।
बृहद्ध तस्थौ भुवनेष्वन्तः पवमानो हरित आ विवेश ॥१४॥

तीनै भुवनमा प्रजाको सृष्टि भएको छ। ती प्रजाहरू सूर्यदेवका आश्रित हुन्छन्। विराट् सूर्यदेव समस्त लोकमा व्याप्त छन् र वायुदेव समस्त दिशामा समाविष्ट रहन्छन्।

माता रुद्राणां दुहिता वसूनां स्वसादित्यानाममृतस्य नाभिः।
प्र नु वोचं चिकितुषे जनाय मा गामनागामदितिं वधिष्ट ॥१५॥

हामी विद्वान्हरूसित अपराधरहित र अवध्य गाईको वध नहोस् भन्दछौँ। किनभने गाई रुद्रका माता, वसुका पुत्री, आदित्यका दिदीबहिनी र अमृतका मुहान हुन्।

वचोविदं वाचमुदीरयन्तीं विश्वाभिर्धीभिरुपतिष्ठमानाम्।
देवीं देवेभ्यः पर्येयुषीं गामा मावृक्त मर्त्यो दभ्रचेताः ॥१६॥

वाणीलाई प्रेरणा प्रदान गर्ने, सबैलाई देवत्व प्रदान गर्ने, हरेक किसिमले बयान गर्न सकिने र हामीतिर आउने गाईलाई हीन बुद्धि भएका मानिसले मात्रै हेला गर्दछन्।

[सूक्त – १०२]

ऋषि – प्रयोग भार्गव अग्नि गृहपति। देवत– अग्नि। छन्द – गायत्री।

त्वमग्ने बृहद्वयो दधासि देव दाशुषे। कविर्गृहपतिर्युवा ॥१॥

हे अग्निदेव ! तिमी अत्यन्त ज्ञानी, घरका मालिक र सधैं युवा रहने खालका छौ। हवि प्रदान गर्नेलाई तिमी महान् अन्न प्रदान गर्दछौ।

स न ईळानया सह देवाँ अग्ने दुवस्युवा। चिकिद्विभानवा वह ॥२॥

हे तेजसम्पन्न अग्निदेव ! तिमी श्रेष्ठ ज्ञानी छौ। हाम्रो भावविह्वल पुकारबाट प्रेरित भएर समस्त देवतालाई तिमी यहाँ लिएर आऊ।

त्वया ह स्विद्युजा वयं चोदिष्ठेन यविष्ठ्य। अभि ष्मो वाजसातये ॥३॥

अत्यन्त बलशाली हे अग्निदेव ! समस्त देवतालाई सन्मार्गमा प्रेरित गर्ने तिमी नै हौ। हामी तिम्रा सहयोगले धनधान्य प्राप्त गर्नका लागि शत्रु परास्त गरौँ।

और्वभृगुवच्छुचिमप्नवानवदा हुवे। अग्निं समुद्रवाससम् ॥४॥

समुद्रमा वास गर्ने हे अग्निदेव ! भृगु र अप्नवान् आदि ज्ञानी ऋषिले साँच्चो मनले तिम्रो प्रार्थना गरेका छन्। हामी पनि हृदयदेखि नै तिम्रो स्तुति गर्दछौँ।

हुवे वातस्वनं कविं पर्जन्यक्रन्द्यं सहः। अग्निं समुद्रवाससम् ॥५॥

मेघजस्तै गर्जना गर्ने, सागरमा सुत्ने, वायुजस्तै सुसाउने, अत्यन्त बलशाली र विद्वान् अग्निदेवलाई हामी बोलाउँछौँ।

आ सवं सवितुर्यथा भगस्येव भुजिं हुवे। अग्निं समुद्रवाससम् ॥६॥

भग देवताजस्तै र आदित्य उदाएजस्तै सागरमा सुत्ने अग्निदेवलाई हामी बोलाउँछौँ।

**अग्निं वो वृधन्तमध्वराणां पुरूतमम्। अच्छा नप्त्रे सहस्वते ॥७॥**

हे ऋत्विक् हो ! आफ्ना श्रेष्ठतम पारमार्थिक कार्यमा सहायक, अति श्रेष्ठ, सबैका हितैषि र बलशाली अग्निदेवका निकट रहौं।

**अयं यथा न आभुवत्त्वष्टा रूपेव तक्ष्या। अस्य क्रत्वा यशस्वतः ॥८॥**

सिकर्मीले काठ खिपेर उत्तम स्वरूप प्रदान गरेझैं यी अग्निदेवका कर्मले हामी यशस्वी हुन्छौं र श्रेष्ठ रूप प्राप्त गर्दछौं।

**अयं विश्वा अभि श्रियोऽग्निर्देवेषु पत्यते। आ वाजैरुप नो गमत् ॥९॥**

सबै किसिमको ऐश्वर्य प्रदान गर्ने अग्निदेव हाम्रा नजिक अन्न र धनका साथ आऊन्।

**विश्वेषामिह स्तुहि होतॄणां यशस्तमम्। अग्निं यज्ञेषु पूर्व्यम् ॥१०॥**

हे याजक हो ! समस्त देवताहरूमा सर्वाधिक कीर्तिमान र यज्ञमा प्रमुख अग्निदेवलाई यज्ञमण्डपमा तिमीहरू प्रार्थना गर।

**शीरं पावकशोचिषं ज्येष्ठो यो दमेष्वा। दीदाय दीर्घश्रुत्तमः ॥११॥**

अग्निदेव देवताहरूमा सर्वश्रेष्ठ र अत्यन्त ज्ञानी भएर याजकका घरमा प्रदीप्त हुन्छन्। हामी उनै पवित्र ज्योतिरूप अग्निदेवलाई प्रार्थना गरौं।

**तमर्वन्तं न सानसिं गृणीहि विप्र शुष्मिणम्। मित्रं न यातयज्जनम् ॥१२॥**

हे स्तोताहरू हो ! अश्वजस्तै सेवा गर्न योग्य, अत्यन्त शक्तिसम्पन्न, सखाजस्तै हर्ष प्रदान गर्ने र शत्रु संहार गर्ने उनै अग्निदेवको प्रार्थना गरौं।

**उप त्वा जामयो गिरो देदिशतीर्हविष्कृतः। वायोरनीके अस्थिरन् ॥१३॥**

हे अग्निदेव ! यजमानका वाणीले उच्चरित हुने प्रिय स्तुतिले तिम्रो गुण प्रकट गर्दछन्। उनीहरू वायुका सहयोगले तिमीलाई प्रदीप्त गर्दछन्।

**यस्य त्रिधात्ववृतं बर्हिस्तस्थावसन्दिनम्। आपश्चिन्नि दधा पदम् ॥१४॥**

अग्निदेव चारैतिर र तीन वटा धारण क्षमताले बाँधिएका छन् र उनका चारैतिर विभिन्न लोकहरू खुला स्थितिमा रहेका छन्। उनै अग्निदेवसँग जलले स्थिर पद प्राप्त गर्दछ।

**पदं देवस्य मीढुषोऽनाधृष्टाभिरूतिभिः। भद्रा सूर्य इवोपदृक् ॥१५॥**

प्रशंसनीय र तेजस्वी अग्निदेवको स्थान शत्रुको बाधाभन्दा निकै पर सुरक्षित छ। उनको दर्शन पनि सूर्यको दर्शनजस्तै कल्याणकारी हुन्छ।

**अग्ने घृतस्य धीतिभिस्तेपानो देव शोचिषा। आ देवान्वक्षि यक्षि च ॥१६॥**

हे अग्निदेव ! तिम्रो वृद्धिको साधनका रूपमा रहेका घिउले समर्थ हुँदै तिमी आफ्ना लप्काले देवताहरूको आह्वान र यजन गर।

**तं त्वाजनन्त मातरः कविं देवासो अङ्गिरः। हव्यवाहममर्त्यम् ॥१७॥**

हे अग्निदेव ! तिमी विद्वान्, अविनाशी र आहुति वहन गर्ने हौ। सबै देवताले तिमीलाई माताले झैं प्रकट गरेका हुन्।

**प्रचेतसं त्वा कवेऽग्ने दूतं वरेण्यम्। हव्यवाहं नि षेदिरे ॥१८॥**

हे ज्ञानी अग्निदेव ! तिमी श्रेष्ठ ज्ञान भएका, आहुति वहन गर्ने र वरण गर्न योग्य छौ। तिमीलाई सबै देवताहरू सम्मानपूर्व प्रतिष्ठित गर्दछन्।

**नहि मे अस्त्यघ्न्या न स्वधितिर्वनन्वति। अथैतादृग्भरामि ते ॥१९॥**

हे अग्निदेव ! हाम्रा नजिकै दुध प्रदान गर्ने गाई छैनन् र हामीसित दाउरा काट्ने बन्चरो पनि छैन। आफ्नो कल्याणका लागि हामी तिमीलाई पोषण गर्दछौं।

**यदग्ने कानि कानि चिदा ते दारूणि दध्मसि। ता जुषस्व यविष्ठ्य ॥२०॥**

हे सामर्थ्यवान् अग्निदेव ! तिमीलाई समर्पित गरेका जुनसुकै दाउरा घिउको आहुतिझैं परम प्रिय होऊन्। ती सबैलाई तिमी अति प्रेमका साथ प्रसन्नतापूर्वक ग्रहण गर।

**यदत्त्युपजिह्विका यद्वम्रो अतिसर्पति। सर्वं तदस्तु ते घृतम् ॥२१॥**

हे तरुण अग्निदेव ! धमिराले सिध्याउने, धुल्याहाले खाने काठका समिधा पनि घिउझैं प्रिय होऊन्।

अग्निमिन्धानो मनसा धियं सचेत मर्त्यः। अग्निमीधे विवस्वभिः ॥२२॥
मन लगाएर अग्नि प्रदीप्त गर्ने साधकले आफ्नो श्रद्धा प्रदीप्त गराउँछ। हामी सूर्यको किरणसँग अग्निहोत्रको व्यवस्था गर्दछौं।

[सूक्त – १०३]

ऋषि – सोभरि काण्व। देवत– अग्नि मरुद्गण। छन्द – बृहती ककुप अनुष्टुप्।

अदर्शि गातुवित्तमो यस्मिन्व्रतान्यादधुः।
उपो षु जातमार्यस्य वर्धनमग्निं नक्षन्त नो गिरः ॥१॥
धर्ममार्गका ज्ञाता अग्निदेव प्रकट भए, उनीबाट यज्ञको नियम पूरा हुन्छ। उत्तम मार्गबाट प्रकट हुने, सज्जनको प्रगतिका आधार अग्निदेव हाम्रो स्तुति स्वीकार गर्छन्।

प्र दैवोदासो अग्निर्देवाँ अच्छा न मज्मना।
अनु मातरं पृथिवीं वि वावृते तस्थौ नाकस्य सानवि ॥२॥
इन्द्रदेवजस्तै शक्तिशाली अग्निदेव दिवोदासका लागि पृथ्वीमा प्रकट भए। आफ्ना यज्ञीय कार्यको परिणामस्वरूप उनी स्वर्गका अधिकारी भए।

यस्माद्रेजन्त कृष्टयश्चर्कृत्यानि कृण्वतः।
सहस्रसां मेधसाताविव त्मनाऽग्निं धीभिः सपर्यत ॥३॥
कर्तव्यपरायणदेखि कर्महीन मानिस भयभीत हुन्छन्। हे मानिस हो ! हजारौं किसिमले दिन सक्ने र बुद्धिपूर्वक गरेका उत्तम कर्मले हजारौं किसिमका ऐश्वर्य प्रदान गर्ने अग्निदेवको सेवा गर।

प्र यं राये निनीषसि मर्तो यस्ते वसो दाशत्।
स वीरं धत्ते अग्न उक्थशंसिनं त्मना सहस्रपोषिणम् ॥४॥
सबैका आधार बनेका हे अग्निदेव ! ऐश्वर्यका लागि तिम्रो उपासक बनेर हवि प्रदान गर्ने साधक हजारौं व्यक्तिको पोषण गर्न सक्षम वीर पुत्र उत्पन्न गर्न समर्थ हुन्छन्।

स दृळ्हे चिदभि तृणत्ति वाजमर्वता स धत्ते अक्षिति श्रवः।
त्वे देवत्रा सदा पुरूवसो विश्वा वामानि धीमहि ॥५॥
प्रचुर ऐश्वर्यका स्वामी हे अग्निदेव ! तिम्रो प्रार्थना गर्ने याजकहरू शक्तिशाली शत्रुका बलियो सहरमा रहेको अन्न आफ्ना अश्वले विनाश गरेर अविनाशी कीर्ति हासिल गर्छन्। हे अग्निदेव ! तिमीजस्तो महान् दाताका अधीनमा रहेर हामी श्रेष्ठ ऐश्वर्य प्राप्त गरौं।

यो विश्वा दयते वसु होता मन्द्रो जनानाम्।
मधोर्न पात्रा प्रथमान्यस्मै प्र स्तोमा यन्त्यग्नये ॥६॥
याजकलाई धनधान्यका रूपमा अपार वैभव दिएर खुसी बनाउने अग्निदेवलाई हामी पहिले स्तुति गर्दछौं। उनलाई सबैभन्दा पहिले सोमको पात्र प्रदान गरिन्छ।

अश्वं न गीर्भी रथ्यं सुदानवो मर्मृज्यन्ते देवयवः।
उभे तोके तनये दस्म विश्पते पर्षि राधो मघोनाम् ॥७॥
हे अग्निदेव ! रथमा नारेका अश्वले रथ वहन गरेझैं श्रेष्ठ दानदाता र देवताका पक्षमा रहने यजमानले तिमीहरूको स्तुति गर्छन्। तिमी याजकका पुत्रपौत्रादिलाई धनवान्‌को धन खोसेर प्रदान गर।

प्र मंहिष्ठाय गायत ऋताव्ने बृहते शुक्रशोचिषे। उपस्तुतासो अग्नये ॥८॥
हे स्तोता हो ! श्रेष्ठ स्तोत्रले अग्निदेवको स्तुति गर। सत्य र यज्ञका पालक, महान् तेजस्वी र रक्षक उनै हुन्।

आ वंसते मघवा वीरवद्यशः समिद्धो द्युम्न्याहुतः।
कुविन्नो अस्य सुमतिर्नवीयस्यच्छा वाजेभिरागमत् ॥९॥
वीरजस्तै प्रतापी अग्निदेव आह्वान गर्दाखेरि प्रदीप्त भएर श्रेयस्कर अन्नधन प्रदान गर्दछन्। अग्निदेवको अनुकूलताले हामीलाई प्रचुर मात्रामा धनधान्य प्राप्त हुन्छ।

प्रेष्ठमु प्रियाणं स्तुह्यासावातिथिम्। अग्निं रथानां यमम् ॥१०॥
हे स्तोता हो ! अग्निदेव आत्मीयजनमा सबैभन्दा अधिक पूज्य अतिथिका रूप र समस्त रथलाई नियन्त्रण गर्ने हुन्। ती अग्निदेवलाई तिमीहरू सबैले प्रार्थना गर।

उदिता यो निदिता वेदिता वस्वा यज्ञियो ववर्तति।
दुष्टरा यस्य प्रवणे नोर्मयो धिया वाजं सिषासतः ॥११॥

अग्निदेव अत्यन्त विद्वान् र वन्दनीय छन्। तिनले प्रकट र गोप्य ऐश्वर्य प्रदान गर्दछन्। उनको विशाल लप्को उँधोतिर बग्ने सागरका तरङ्गभैं भयङ्कर छ। उनै अग्निदेवलाई तिमीहरू प्रार्थना गर।

मा नो हृणीतामतिथिर्वसुरग्निः पुरुप्रशस्त एषः। यः सुहोता स्वध्वरः ॥१२॥

हाम्रा प्रिय अतिथिजस्ता अग्निदेवलाई यज्ञभन्दा पर नलैजाऔं। उनी देवतालाई बोलाउने, धनदाता र अनेकौं मानिसहरूबाट स्तुत्य छन्।

मो ते रिषन्ये अच्छोक्तिभिर्वसोऽग्ने केभिश्चिदेवैः।
कीरिश्चिद्धि त्वामीट्टे दूत्याय रातहव्यः स्वध्वरः ॥१३॥

सबैलाई निवास प्रदान गर्ने हे अग्निदेव ! आफ्ना श्रेष्ठ वाणीले र श्रेष्ठ साधनले तिम्रो साधना गर्ने यजमान कहिल्यै दुःखी हुँदैनन्। यज्ञ सम्पादन गर्ने र आहुति प्रदान गर्ने याजकले सन्देशवाहकको रूपमा कार्य गर्ने तिमीलाई स्तुति गर्दछन्।

आग्ने याहि मरुत्सखा रुद्रेभिः सोमपीतये।
सोभर्या उप सुष्टुतिं मादयस्व स्वर्णरे ॥१४॥

मरुत्का मित्र हे अग्निदेव ! तिमी हाम्रा यज्ञमण्डपमा सोमपानका लागि मरुत्हरूसँगै आऊ। हे अग्निदेव ! म सोभरि ऋषिको प्रार्थना ग्रहण गरेर तिमी खुसी होऊ।

॥इति अष्टमं मण्डलं समाप्तम्॥
आठौं मण्डल सकियो

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ नवमं मण्डलम्॥

॥नवौं मण्डल॥

[सूक्त - १]

**ऋषि** - मधुच्छन्दा वैश्वामित्र। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**स्वादिष्ठया मदिष्ठया पवस्व सोम धारया। इन्द्राय पातवे सुतः ॥१॥**

हे सोमदेव ! इन्द्रदेवले पान गर्नका लागि तिमीलाई निकालिएका हुनाले अत्यन्त स्वादिष्ट हर्षप्रदायक धाराका रूपमा प्रवाहित होऊ।

**रक्षोहा विश्वचर्षणिरभि योनिमयोहतम्। द्रुणा सधस्थमासदत् ॥२॥**

दुष्ट नाश गर्ने, मानिसका लागि हितकारी सोमदेव शुद्ध भएर सुनको पात्रमा भरिएपछि यज्ञस्थलमा प्रतिष्ठित भएका छन्।

**वरिवोधातमो भव मंहिष्ठो वृत्रहन्तमः। पर्षि राधो मघोनाम् ॥३॥**

हे सोमदेव ! तिमी महान् ऐश्वर्य प्रदाता तथा शत्रु नाशक हौ। वृत्रासुर हनन गरेर उसको महान् धन हामीलाई प्रदान गर।

**अभ्यर्ष महानां देवानां वीतिमन्धसा। अभि वाजमुत श्रवः ॥४॥**

हे सोमदेव ! तिमी महान् देवगणका यज्ञमा अन्नसहित आऊ र हामीलाई अन्नको बल प्रदान गर।

**त्वामच्छा चरामसि तदिदर्थं दिवेदिवे। इन्दो त्वे न आशसः ॥५॥**

हे सोमदेव ! हाम्रो इच्छा सधैं तिमीमा समर्पित छ। त्यसैले हामी उत्तम विधिले तिम्रो सेवा गर्दछौं।

**पुनाति ते परिस्रुतं सोमं सूर्यस्य दुहिता। वारेण शश्वता तना ॥६॥**

हे सोमदेव ! सूर्यपुत्रीले तिम्रो रसलाई सनातन र आवरणबाट बनाउँछिन्।

**तमीमण्वीः समर्य आ गृभ्णन्ति योषणो दश। स्वसारः पार्ये दिवि ॥७॥**

सोम पवित्र गराउँदा दिदीबहिनीजस्तै दस औँलाहरूले सोमवल्ली समातेका हुन्छन्।

**तमीं हिन्वन्त्यग्रुवो धमन्ति बाकुरं दृतिम्। त्रिधातु वारणं मधु ॥८॥**

तेजस्वी सोमरसलाई औंलाले निचोरेर रस निकाल्दछन्। यस्तो दुःख निवारक मधुर रसमा तीन शक्तिहरू रहेका हुन्छन्।

**अभीऽ३ ममघ्न्या उत श्रीणन्ति धेनवः शिशुम्। सोममिन्द्राय पातवे ॥९॥**

अवध्य गाईले बाछो पोस्नका लागि दुध चुसाएझैं सोमले इन्द्रदेवलाई पोस्छ।

**अस्येदिन्द्रो मदेष्वा विश्वा वृत्राणि जिघ्नते। शूरो मघा च मंहते ॥१०॥**

सोमपान गरेर खुसी भएका इन्द्रदेव शत्रु संहार गरेर याज्ञिकलाई धन प्रदान गर्दछन्।

[सूक्त - २]

**ऋषि** - मेधातिथि काण्व। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**पवस्व देववीरति पवित्रं सोम रंह्या। इन्द्रमिन्दो वृषा विश ॥१॥**

हे सोमदेव ! देवशक्तिको निकटता पाउने रहर भएका तिमी तीव्र गतिले शोधित होऊ। हे सोमदेव ! तिमी बलवर्द्धक भएर इन्द्रदेवको तृप्तिका लागि प्रतिष्ठित होऊ।

**आ वच्यस्व महि प्सरो वृषेन्दो द्युम्नवत्तमः। आ योनिं धर्णसिः सदः ॥२॥**

हे सोमदेव ! शौर्यवान्, दीप्तिमान् र सर्वधारक गुणले युक्त भएका तिमी प्रचुर मात्रामा अन्न र बल हामीलाई प्रदान गर र निर्धारित स्थानमा बस।

**अधुक्षत प्रियं मधु धारा सुतस्य वेधसः। अपो वसिष्ट सुक्रतुः ॥३॥**

शोधित सोमरसका धाराले मन पर्ने रस पात्रमा जम्मा पार्दछन्। सत्कर्मयुक्त याज्ञिक सोममा जल मिश्रित गर्दछन्।

महान्तं त्वा महीरन्वापो अर्षन्ति सिन्धवः। यद्गोभिर्वासयिष्यसे ॥४॥

हे सोमदेव ! तिमी गाईमा मिश्रित हुँदा महान् जल तिमीतिर आकर्षित हुन्छ।

समुद्रो अप्सु मामृजे विष्टम्भो धरुणो दिवः। सोमः पवित्रे अस्मयुः ॥५॥

जलयुक्त, देवलोक धारण गर्ने र आधारभूत रूपमा हामीले रुचाएको सोमरसमा जल मिसाइएको छ। त्यहीं महान् जल तिमीतिर आकर्षित हुन्छ।

अचिक्रदद्वृषा हरिर्महान्मित्रो न दर्शतः। सं सूर्येण रोचते ॥६॥

प्रिय मित्रजस्तो, शक्तिसम्पन्न, हरियो आभा भएको सोमरस पेल्दाखेरि शब्द गर्दै सूर्य उदाएझैं प्रकाशित हुन्छ।

गिरस्त इन्द ओजसा मर्मृज्यन्ते अपस्युवः। याभिर्मदाय शुम्भसे ॥७॥

हे सोमदेव ! तिम्रो शक्ति र सामर्थ्यले कर्मको प्रेरणा पाउने स्तोताहरू वेदमन्त्र उच्चारण गर्दछन्। उनीहरू स्तुतिमन्त्रले आनन्द बढाउनका लागि तिमीलाई सजाउँछन्।

तं त्वा मदाय घृष्वय उ लोककृत्नुमीमहे। तव प्रशस्तयो महीः ॥८॥

संसारको हित गर्ने इच्छाले शत्रु संहार गर्ने हे सोमदेव ! हामी धेरै आनन्द पाउनका लागि महान् स्तोत्रले तिम्रो स्तुति गर्दछौं।

अस्मभ्यमिन्दविन्द्रयुर्मध्वः पवस्व धारया। पर्जन्यो वृष्टिमाँ इव ॥९॥

हे सोमदेव ! जीवनरूपी वर्षा गराएझैं गरी हाम्रा इन्द्रियका शक्ति र सामर्थ्यलाई आफ्नो अमृतरूपी मधुर धाराले बढाइदेऊ।

गोषा इन्दो नृषा अस्यश्वसा वाजसा उत। आत्मा यज्ञस्य पूर्व्यः ॥१०॥

हे सोमदेव ! यज्ञको मूल र प्रमुख आत्माका रूपमा हामीलाई गाई, अश्व, अन्न र असल सन्तान प्रदान गर्दछौ।

[सूक्त – ३]

ऋषि – शुनःशेप आजीगर्ति। देवता – पवमान सोम। छन्द – गायत्री।

एष देवो अमर्त्यः पर्णवीरिव दीयति। अभि द्रोणान्यासदम् ॥१॥

अमर पदवी पाएका दिव्य सोमदेव गतिमान् चरोझैं कलशमा वेगका साथ पस्दछन्।

एष देवो विपा कृतोऽति ह्वरांसि धावति। पवमानो अदाभ्यः ॥२॥

औंलाले निचोरेर सफा गरिएको सोम स्वयं अदम्य रहेर शत्रुको दमन गर्दछ।

एष देवो विपन्युभिः पवमान ऋतायुभिः। हरिर्वाजाय मृज्यते ॥३॥

शोधित सोमरसलाई उद्‌गाताहरूका स्तुतिले युद्धमा जान लागेका अश्वलाई झैं सबै किसिमले सुशोभित गर्छ र मन्त्रशक्तिले अत्यधिक प्रभावउत्पादक बनाउँछ।

एष विश्वानि वार्या शूरो यन्निव सत्वभिः। पवमानः सिषासति ॥४॥

शोधित, बलयुक्त सोमले आफ्ना सामर्थ्यले उत्तम ऐश्वर्य प्राप्त गरेपछि समुचित वितरण होस् भन्ने इच्छा गर्दछ।

एष देवो रथर्यति पवमानो दशस्यति। आविष्कृणोति वग्वनुम् ॥५॥

शोधित एवं दिव्य सोमदेव ध्वनि गर्दै यज्ञस्थलमा जाने उपयुक्त माध्यमको कामना गर्दछ र याजकले खोजेको कुरो प्रदान गर्न चाहन्छ।

एष विप्रैरभिष्टुतोऽपो देवो वि गाहते। दधद्रत्नानि दाशुषे ॥६॥

असल मानिसले प्रशंसा गर्ने दिव्य सोम हविदातालाई धनवैभव प्रदान गर्दै जलमा मिश्रित हुन्छ।

एष दिवं वि धावति तिरो रजांसि धारया। पवमानः कनिक्रदत् ॥७॥

प्रशोधित भएर, शब्द गर्दै, धारो लागेर प्रकट भएको सोम शत्रु जितेर यज्ञका प्रभावले पुनः मास्तिर लाग्दछ।

एष दिवं व्यासरत्तिरो रजांस्यस्पृतः। पवमानः स्वध्वरः ॥८॥

उत्तम यज्ञ गराउने, प्रशोधित र दिव्य सोम शत्रु पराजित गर्न समर्थ छ र यस यज्ञबाट दिव्यलोक जान्छन्।

**एष प्रत्नेन जन्मना देवो देवेभ्यः सुतः। हरिः पवित्रे अर्षति ॥९॥**

चलनअनुसार शुद्ध बनाएको हरियो आभायुक्त सोम देवताले पान गर्नका लागि छानेर ठिक्क पारिन्छ।

**एष उ स्य पुरुव्रतो जज्ञानो जनयन्निषः। धारया पवते सुतः ॥१०॥**

विशिष्ट कार्यक्षमताको जनक र पोषिलो अन्न उब्जाउने सोम आफ्ना प्रवाहका क्रममा स्वाभाविक रूपले शुद्ध हुन्छ।

[सूक्त - ४]

**ऋषि** - हिरण्यस्तूप आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**सना च सोम जेषि च पवमान महि श्रवः। अथा नो वस्यसस्कृधि ॥१॥**

अत्यधिक स्तुत्य र पवित्र हे सोमदेव ! तिमी देवशक्ति बन र शत्रुमाथि विजय प्राप्त गराएर हामीलाई कीर्तिमान बनाऊ।

**सना ज्योतिः सना स्व१र्विश्वा च सोम सौभगा। अथा नो वस्यसस्कृधि ॥२॥**

हे सोमदेव ! हामीलाई तेजस्विता प्रदान गर। स्वर्गका जस्ता सबै सुख र सौभाग्य प्रदान गर्दै तिमीले हाम्रो हित गर।

**सना दक्षमुत क्रतुमप सोम मृधो जहि। अथा नो वस्यसस्कृधि ॥३॥**

हे सोमदेव ! हामीलाई बल र यज्ञका कार्य सम्पन्न गर्ने शक्ति प्रदान गर र शत्रु पराजित गरेर हाम्रो हित गर।

**पवीतारः पुनीतन सोममिन्द्राय पातवे। अथा नो वस्यसस्कृधि ॥४॥**

सोमरस शोधन गर्ने हे याजक हो ! इन्द्रदेवले पान गर्नका लागि सोमरस पवित्र बनाओ र त्यसबाट उनले हाम्रो हित गरुन्।

**त्वं सूर्ये न आ भज तव क्रत्वा तवोतिभिः। अथा नो वस्यसस्कृधि ॥५॥**

हे सोमदेव ! तिमी आफ्ना सत्कर्म र संरक्षणयुक्त साधनले हामीलाई सूर्यदेवतिर प्रेरित गर र हित गर।

**तव क्रत्वा तवोतिभिर्ज्योक्पश्येम सूर्यम्। अथा नो वस्यसस्कृधि ॥६॥**

हे सोमदेव ! तिमीले प्रदान गरेको सद्बुद्धिले र तिमीले गरेको संरक्षणले हामी धेरै वर्षसम्म सूर्यको दर्शन गर्दै लाभान्वित हुन पाऔं, तिमी हाम्रो हित गर।

**अभ्यर्ष स्वायुध सोम द्विबर्हसं रयिम्। अथा नो वस्यसस्कृधि ॥७॥**

हे गतिला शस्त्र धारण गरेका सोमदेव ! लौकिक र पारलौकिक दुवै किसिमका धनले हामीलाई सम्पन्न गर र त्यसैबाट हाम्रो हित गर।

**अभ्य१र्षानपच्युतो रयिं समत्सु सासहिः। अथा नो वस्यसस्कृधि ॥८॥**

हे शक्तिसम्पन्न सोमदेव ! युद्धभूमिमा विजयी हुने र शत्रु पराजित गर्ने तिमी कलशमा स्थापित होऊ र हाम्रो हित गर।

**त्वां यज्ञैरवीवृधन् पवमाना विधर्मणि। अथा नो वस्यसस्कृधि ॥९॥**

हे पवित्रताले सम्पन्न सोमदेव ! अति फलदायक यज्ञमा उत्तम स्तोत्र गाउँदै तिम्रो महिमा बढाउँछौं, तिमी हाम्रो हित गर।

**रयिं नश्चित्रमश्विनमिन्दो विश्वायुमा भर। अथा नो वस्यसस्कृधि ॥१०॥**

हे सोमदेव ! हामीलाई विचित्र अश्वले सम्पन्न र संसारको हित गर्ने वैभव मनग्गे मात्रामा प्रदान गरेर हाम्रो हित गर।

[सूक्त - ५]

**ऋषि** - काश्यप। **देवता** - आप्रीसूक्त। **छन्द** - गायत्री अनुष्टुप्।

**समिद्धो विश्वतस्पतिः पवमानो वि राजति। प्रीणन् वृषा कनिक्रदत् ॥१॥**

सबैका स्वामी, तेजस्वी, बलशाली, सोम शब्द गर्दै पवित्र हुन्छन् र सन्तुष्ट पार्छन्।

**तनूनपात् पवमानः शृङ्गे शिशानो अर्षति। अन्तरिक्षेण रारजत् ॥२॥**

शरीरलाई क्षीण नगराउने पवित्र सोमरस अन्तरिक्षबाट टल्किँदै उच्च भागमा तेजस्वी रूपमा चुहन थाल्दछ।

ईडन्यः पवमानो रयिर्वि राजति द्युमान्। मधोर्धाराभिरोजसा ॥३॥

प्रशंसा गर्न योग्य पवित्र सोमरस तेजस्वी भएर आफ्ना मधुर रसधाराले सुशोभित हुँदै याज्ञिकले खोजेको धन प्रदान गरोस्।

बर्हिः प्राचीनमोजसा पवमानः स्तृणन् हरिः। देवेषु देव ईयते ॥४॥

दिव्य हरियालीबाट सोम प्रशोधित हुँदा देवताहरू आफ्ना अगाडि ओछ्याइएका आसनतिर शक्ति लगाएर आउँछन्।

उदातैर्जिहते बृहद् द्वारो देवीर्हिरण्ययीः। पवमानेन सुष्टुताः ॥५॥

उत्तम किसिमले पूजा गरिने सुनौला किरण दिव्य सोमसँग आफ्ना पराक्रमले सर्वतिर देखिन थाल्दछन्।

सुशिल्पे बृहती मही पवमानो वृषण्यति। नक्तोषासा न दर्शते ॥६॥

यो सोम महान् गुणले युक्त, पूज्य, दर्शनीय र सुन्दर उषादेवीको रहर गर्दछ।

उभा देवा नृचक्षसा होतारा दैव्या हुवे। पवमाना इन्द्रो वृषा ॥७॥

सबै मानिसका द्रष्टा र दिव्य होता यी दुवै देवताको हामी प्रार्थना गर्दछौं।

भारती पवमानस्य सरस्वतीडा मही।
इमं नो यज्ञमा गमन्तिस्रो देवीः सुपेशसः ॥८॥

हाम्रो यस पवित्र यज्ञमा भारती, सरस्वती र इडा तीनै देवीहरू आऊन्।

त्वष्टारमग्रजां गोपां पुरोयावानमा हुवे।
इन्दुरिन्द्रो वृषा हरिः पवमानः प्रजापतिः ॥९॥

सनातन, प्रजापालक, सृष्टिकर्ता र अगाडि लैजाने त्वष्टादेवलाई हामी आह्वान गर्दछौं। हरियो आभा भएका पवित्र सोमले रहर पूरा गराउने प्रजापालक इन्द्रदेवलाई पनि हामी यस यज्ञमा आह्वान गर्दछौं।

वनस्पतिं पवमान मध्वा समङ्ग्धि धारया।
सहस्रवल्शं हरितं भ्राजमानं हिरण्ययम् ॥१०॥

हे पवमान सोमदेव ! तिमी आफ्ना हजारौं मधुर धाराका संयोगले वनस्पतिलाई हरियो बनाउँछौ र सुनौला प्रकाशयुक्त हजारौं धाराले संसारको सेचन गर्दछौ।

विश्वे देवाः स्वाहाकृतिं पवमानस्या गत।
वायुर्बृहस्पतिः सूर्योऽग्निरिन्द्रः सजोषसः ॥११॥

हे वायु, बृहस्पति, सूर्य, अग्नि र इन्द्रदेव हो ! यज्ञमा आओ र उत्तम सम्मान प्राप्त गर।

[सूक्त - ६]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

मन्द्रया सोम धारया वृषा पवस्व देवयुः। अव्यो वारेष्वस्मयुः ॥१॥

बल बढाउने, देवताले रुचाउने हे सोमदेव ! हामीलाई तिमी संरक्षण प्रदान गर र आनन्ददायक धाराका रूपमा चालनीबाट प्रशोधित होऊ।

अभि त्यं मदमिन्दविन्द्र इति क्षर। अभि वाजिनो अर्वतः ॥२॥

हे सोमदेव ! तिमी परमात्मा हौ, त्यसैले आनन्द प्रदान गर्ने सोमरसको वर्षा गर र हामीलाई बलिया घोडा प्रदान गर।

अभि त्यं पूर्व्यं मदं सुवानो अर्ष पवित्र आ। अभि वाजमुत श्रवः ॥३॥

हे सोमदेव ! तिमी रस निकाल्ने वेलामा शाश्वत आनन्द बढाउने बनेर यज्ञस्थलमा आएर हामीलाई अन्न र बल प्रदान गर।

अनु द्रप्सास इन्दव आपो न प्रवतासरन्। पुनाना इन्द्रमाशत ॥४॥

शीघ्र कुद्ने, शोधित सोमरस उत्तम मार्गबाट जलधाराझैं प्रवाहित भएर इन्द्रदेवलाई प्राप्त होऊन्।

यमत्यमिव वाजिनं मृजन्ति योषणो दश। वने क्रीळन्तमत्यविम् ॥५॥

वनमा उत्पन्न हुने, सूर्यभन्दा बढी तेजस्वी सोमलाई याजकहरूका फुर्तिला घोडाजस्ता दस औंलाले निचोर्दछन्।

तं गोभिर्वृषणं रसं मदाय देववीतये। सुतं भराय सं सृज ॥६॥
सोम बलवर्द्धक हुनाले देवताहरूका लागि आनन्ददायी छ। सोमरसलाई याजकहरूले गाईको दुधमा मिसाउँछन्।

देवो देवाय धारयेन्द्राय पवते सुतः। पयो यदस्य पीपयत् ॥७॥
दिव्य सोमरस इन्द्रदेवका लागि धारो लागेर भाँडामा खसेर इन्द्रदेवलाई बलियो पार्दछ।

आत्मा यज्ञस्य रंह्या सुष्वाणः पवते सुतः। प्रत्नं नि पाति काव्यम् ॥८॥
यज्ञको आत्माजस्तै भएर सोमरस यजमानको रहर पूरा गराउनका लागि भाँडाभित्र छिटोछिटो झर्दछ र पहिलेदेखि चलिआएका स्तोत्रको नियम पालन गर्दछ।

एवा पुनान इन्द्रयुर्मदं मदिष्ठ वीतये। गुहा चिद्दधिषे गिरः ॥९॥
हे आनन्द बढाउने सोमदेव ! स्तुतिरूपी वाणी स्वीकार गरेर तिमी इन्द्रदेवलाई पान गर्नका लागि आनन्ददायी बन र यज्ञशालामा स्थापित होऊ।

[सूक्त – ७]

ऋषि – काश्यप। देवता – पवमान सोम। छन्द – गायत्री।

असृग्रमिन्दवः पथा धर्मन्नृतस्य सुश्रियः। विदाना अस्य योजनम् ॥१॥
यजमान एवं देवताहरूका सम्बन्धमा राम्रो जानकारी पाएका यशस्वी सोमदेव धर्मकार्य जस्तै भएर यज्ञका मार्गमा ठक्लन्छन्।

प्र धारा मध्वो अग्रियो महीरपो वि गाहते। हविर्हविष्षु वन्द्यः ॥२॥
हविमध्येको असल, प्रशंसा गरिने खालको, हविरूपी सोम जलमा मिसिएर मधुर रसको धाराले युक्त भई भाँडामा जम्मा हुँदै छ।

प्र युजो वाचो अग्रियो वृषाव चक्रदद्वने। सद्माभि सत्यो अध्वरः ॥३॥
आहुतिहरूमा पहिलो, वाणी उत्पादन गराउने, शक्तिशाली, सत्यताले युक्त र अहिंसक सोमरस जलसँग मिसिएर यज्ञशालामा प्रवेश हुन्छ।

परि यत्काव्या कविर्नृम्णा वसानो अर्षति। स्वर्वाजी सिषासति ॥४॥
ज्ञानले सम्पन्न सोमदेव आफ्नो शक्तिले मानिसमा पवित्रताको सञ्चार गराउँछन्। तिनले स्तुति स्वीकार गरेपछि शक्तिशाली इन्द्रदेव स्वर्गबाट यज्ञस्थलमा आउन तयार हुन्छन्।

पवमानो अभि स्पृधो विशो राजेव सीदति। यदीमृण्वन्ति वेधसः ॥५॥
याज्ञिकका प्रेरणाले संस्कारित सोमदेव राजाजस्तो भएर प्रजाको रक्षा र शत्रुको संहार गर्नका लागि तयार हुन्छन्।

अव्यो वारे परि प्रियो हरिर्वनेषु सीदति। रेभो वनुष्यते मती ॥६॥
जल मिसिएको, हरियो आभायुक्त र मन्त्रले पवित्र गर्दा ऋत्विकहरूले गरेका स्तुति स्वीकार गर्ने सोम ध्वनि उत्पन्न गर्दै पात्रमा जम्मा भई अडिन्छ।

स वायुमिन्द्रमश्विना साकं मदेन गच्छति। रणा यो अस्य धर्मभिः ॥७॥
जुन याजक सोम निकाल्ने र शुद्ध गर्ने काममा जुटेका हुन्छन्, तिनीहरू खुसी थपिदिने सोमसँगै वायु, इन्द्र र अश्विनीकुमारका नजिक पुगेर लाभ उठाउँछन्।

आ मित्रावरुणा भगं मध्वः पवन्त ऊर्मयः। विदाना अस्य शक्मभिः ॥८॥
ऋत्विक्ले मित्र, वरुण र भगदेवका लागि मधुर सोमका धारा प्रवाहित गर्छन्। सोमदेवको महिमाबाट परिचित ती याजकले आनन्द प्राप्त गर्दछन्।

अस्मभ्यं रोदसी रयिं मध्वो वाजस्य सातये। श्रवो वसूनि सं जितम् ॥९॥
हे पृथ्वी र द्युलोकका अधिष्ठाता देवता हो ! सोमरसरूपी अत्यन्त पोषक आहार प्राप्त गर्नका लागि तिमीहरू हामीलाई धनधान्यका रूपमा अपार वैभव प्रदान गर।

[सूक्त – ८]

ऋषि – काश्यप। देवता – पवमान सोम। छन्द – गायत्री।

एते सोमा अभि प्रियमिन्द्रस्य काममक्षरन्। वर्धन्तो अस्य वीर्यम् ॥१॥
इन्द्रदेवको सामर्थ्य बढाउने यस सोमले उनलाई प्रिय लाग्ने रसको वर्षा गराउँछ।

पुनानासश्चमूषदो गच्छन्तो वायुमश्विना। ते नो धान्तु सुवीर्यम् ॥२॥
हे शुद्ध सोमदेव ! वायु र अश्विनीकुमारसँग हामीलाई वीरसुहाउँदो श्रेष्ठता प्रदान गर।

इन्द्रस्य सोम राधसे पुनानो हार्दि चोदय। ऋतस्य योनिमासदम् ॥३॥
हे पवित्र सोमदेव ! इन्द्रको आराधना गर्ने प्रेरणा हाम्रा हृदयमा उत्पन्न गर। हामी देवताका लागि सुहाउँदो यज्ञकर्म गर्नका लागि प्रस्तुत भएका छौं।

मृजन्ति त्वा दश क्षिपो हिन्वन्ति सप्त धीतयः। अनु विप्रा अमादिषुः ॥४॥
हे सोमदेव ! दस दिशाले तिमीलाई चोख्याउँछन्, सात धारण शक्तिले बढाउँछन् र विप्ररूपी सत्पुरुषले सन्तुष्ट गराउँछन्।

देवेभ्यस्त्वा मदाय कं सृजानमति मेष्यः। सं गोभिर्वासयामसि ॥५॥
हे विशुद्ध सुखदायी सोम ! तिमी देवतालाई आनन्द प्रदान गर्ने हुनाले तिमीलाई हामी गाईका दुधमा मिसाउँछौं।

पुनानः कलशेष्वा वस्त्राण्यरुषो हरिः। परि गव्यान्यव्यत ॥६॥
शुद्ध भएर कलशमा रहने, हरियो आभा भएका सोमलाई गाईका दुधले धारण गर्दछ।

मघोन आ पवस्व नो जहि विश्वा अप द्विषः। इन्दो सखायमा विश ॥७॥
हे सोमदेव ! हामीलाई धनऐश्वर्ययुक्त गराउन पवित्र तिमी होऊ, रिस गर्नेको नाश गर र मित्ररूपी इन्द्रदेवमा एकाकार होऊ।

वृष्टिं दिवः परि स्रव द्युम्नं पृथिव्या अधि। सहो नः सोम पृत्सु धाः ॥८॥
हे सोमदेव ! तिमी आकाशबाट पृथिवीमा दिव्य पदार्थ वर्षा गराऊ। पृथ्वीमा पोषक रस उत्पन्न गर र हामीलाई सङ्घर्षको शक्ति प्रदान गर।

नृचक्षसं त्वा वयमिन्द्रपीतं स्वर्विदम्। भक्षीमहि प्रजामिषम् ॥९॥
हे सोमदेव ! सबै प्राणीको हेरचाह गर्ने सर्वज्ञ इन्द्रदेवले तिमीलाई पान गर्छन्। हामीलाई सन्तान, अन्न, बल र सद्बुद्धि देऊ।

[सूक्त - ९]

ऋषि – काश्यप। देवता – पवमान सोम। छन्द – गायत्री।

परि प्रिया दिवः कविर्वयांसि नप्त्योर्हितः। सुवानो याति कविक्रतुः ॥१॥
बुद्धिवर्द्धक सोमरस निकालेर दुईतर्फ रहेका ब्रह्मनिष्ठले सचेत प्राणीसम्म पुऱ्याउँछन्।

प्रप्र क्षयाय पन्यसे जनाय जुष्टो अद्रुहे। वीत्यर्ष चनिष्ठया ॥२॥
हे सोमदेव ! तिम्रो स्थायित्वका लागि प्रयत्नशील, द्रोहरहित, मित्रभावले गुणगान गर्ने मानिसको आहारका रूपमा उपयोग गरिएर तिमी स्तुति गर्न योग्य हुन्छौ।

स सूनुर्मातरा शुचिर्जातो जाते अरोचयत्। महान्मही ऋतावृधा ॥३॥
सफा पारिँदै गरेका सोमरूपी महान् पुत्रले यज्ञलाई पोषण प्रदान गर्ने प्रसिद्ध मातापिता अन्तरिक्ष र पृथ्वीलाई सुशोभित गराउँछ।

स सप्त धीतिभिर्हितो नद्यो अजिन्वदद्रुहः। या एकमक्षि वावृधुः ॥४॥
धारणशक्तिले सुरक्षित, द्रोहरहित सोम प्रकृतिका सात प्रवाहरूपी नदीलाई आनन्दित गराउँछ। तिनले यस अक्षय सोमलाई बढाउँछन्।

ता अभि सन्तमस्तृतं महे युवानमा दधुः। इन्दुमिन्द्र तव व्रते ॥५॥
हे इन्द्रदेव ! यज्ञमा देवतालाई अर्पित गर्नका लागि अहिंसित, बलवान्, तरुण सोमलाई नदीले आफूभित्र समेट्छन्।

अभि वह्निरमर्त्यः सप्त पश्यति वावहिः। क्रिविर्देवीरतर्पयत् ॥६॥
हवनीय सामग्रीले देवतालाई खुसी पार्ने, यज्ञका सञ्चालक, मृत्युरहित सोम सात प्रवाह हेर्दछन्। उनी इनारझैं पानीले पूर्ण भएर दिव्य प्रवाहलाई सन्तुष्ट गराउँछन्।

अवा कल्पेषु नः पुमस्तमांसि सोम योध्या। तानि पुनान जङ्घनः ॥७॥
पवित्रता प्रदान गर्ने हे दिव्य सोमदेव ! तिमी युद्धको रहर गर्ने राक्षस संहार गरेर प्रत्येक अवसरमा हाम्रो संरक्षण गर।

**नू नव्यसे नवीयसे सूक्ताय साधया पथः। प्रत्नवद्रोचया रुचः ॥८॥**
हे स्तुत्य एवं प्रशंसनीय सोमदेव ! सूक्त सुन्नका लागि तिमी पहिलेको जस्तै आफ्नो तेज प्रकट गर्दै उत्तम मार्गबाट आऊ।

**पवमान महि श्रवो गामश्वं रासि वीरवत्। सना मेधां सना स्वः ॥९॥**
हे सोमदेव ! तिमी अन्न, गाई र अश्वसहित वीर सन्तान प्रदान गर्दछौ। यी सबै खालका ऐश्वर्यले युक्त गराउँदै हामीलाई सद्बुद्धि प्रदान गर।

[सूक्त - १०]

**ऋषि** - काश्यप। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**प्र स्वानासो रथा इवार्वन्तो न श्रवस्यवः। सोमासो राये अक्रमुः ॥१॥**
अश्व एवं रथझैं वेगपूर्वक र ध्वनि उत्पन्न गराउँदै सोमरस प्रशोधन हुँदै छ। शोधन भएका सोमदेवले हामीलाई मनग्गे यश र वैभव दिऊन्।

**हिन्वानासो रथा इव दधन्विरे गभस्त्योः। भरासः कारिणामिव ॥२॥**
युद्धमा हिँडेका रथझैं यज्ञतिर जान लागेका सोमरसलाई भरियाले दुवै हातले भारी उचालेझैं याजकले लिएका छन्।

**राजानो न प्रशस्तिभिः सोमासो गोभिरञ्जते। यज्ञो न सप्त धातृभिः ॥३॥**
प्रशंसित राजा र सात याजकबाट यज्ञदेवको प्रतिष्ठा भएझैं गरी गाईका घिउ आदिले यी सोमदेव संस्कारित हुन्छन्।

**परि सुवानास इन्दवो मदाय बर्हणा गिरा। सुता अर्षन्ति धारया ॥४॥**
पेलेर तयार भएको अमृतरूपी, ज्ञानवर्द्धक, मधुर सोमरस साधकले स्तुति गर्दै छाने।

**आपानासो विवस्वतो जनन्त उषसो भगम्। सूरा अण्वं वि तन्वते ॥५॥**
इन्द्रदेवले पान गरुन् भनेर सोमरस शब्द गर्दै तल झर्ने उषाकालको समय शुभ हुन्छ।

**अप द्वारा मतीनां प्रत्ना ऋण्वन्ति कारवः। वृष्णो हरस आयवः ॥६॥**
शक्तिशाली सोमदेवको स्तुति गर्ने स्तोताहरू पुराना यज्ञका ढोका उघार्दछन्।

**समीचीनास आसते होतारः सप्तजामयः। पदमेकस्य पिप्रतः ॥७॥**
मिल्ने दाजुभाइजस्ता सात याज्ञिक सोमको स्थान भरेर एकै साथ यज्ञकर्मको अनुष्ठान गर्न उपस्थित हुन्छन्।

**नाभा नाभिं न आ ददे चक्षुश्चित्सूर्ये सचा। कवेरपत्यमा दुहे ॥८॥**
आँखाका भरोसा सूर्य हुन्। आफ्नो नाभिका लागि हामी कविपुत्र सोम दोहन गर्दछौं।

**अभि प्रिया दिवस्पदमध्वर्युभिर्गुहा हितम्। सूरः पश्यति चक्षसा ॥९॥**
बलवान् इन्द्रदेवका आँखाले दिव्यलोक र हृदयमा रहेको सोम अध्वर्युद्वारा देख्दछन्।

[सूक्त - ११]

**ऋषि** - काश्यप। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**उपास्मै गायता नरः पवमानायेन्दवे। अभि देवाँ इयक्षते ॥१॥**
हे याजक हो ! देवशक्तिलाई यज्ञमा काम लाग्ने, विशुद्ध सोमको स्तुति गर।

**अभि ते मधुना पयोऽथर्वाणो अशिश्रयुः। देवं देवाय देवयु ॥२॥**
यो दिव्य रस देवताले दिव्यपुरुषका लागि बनाएका हुन्। अथर्वा ऋषिले तिमीलाई गाईको मिठो दुध दिएका छन्।

**स नः पवस्व शं गवे शं जनाय शमर्वते। शं राजन्नोषधीभ्यः ॥३॥**
हे सोमदेव ! तिमी स्वयं शुद्ध भएर पशुधन, प्रजाधन र अश्व आदि सैन्यबलको हित गर र औषधि पवित्र बनाऊ।

**बभ्रवे नु स्वतवसेऽरुणाय दिविस्पृशे। सोमाय गाथमर्चत ॥४॥**
हे स्तोता हो ! खैरा रङ्गका बलिया, अरुणिमायुक्त, आकाशमा रहने सोमको स्तुति गर।

**हस्तच्युतेभिरद्रिभिः सुतं सोमं पुनीतन। मधावा धावता मधु ॥५॥**
हे ऋत्विक् हो ! ढुङ्गामा कुटेर निकालिएको सोमरस छान र मिठो सोमरसमा उस्तै मिठो गाईको दुध मिसाओ।

नमसेदुप सीदत दध्नेदभि श्रीणीतन। इन्दुमिन्द्रे दधातन ॥६॥
हे ऋत्विक् हो ! सोमरसलाई नमस्कार गर्दै दहीमा मिसाएर राख। दीप्तिमान् सोमरस पिउन इन्द्रदेवलाई अर्पित गर।

अमित्रहा विचर्षणिः पवस्व सोम शं गवे। देवेभ्यो अनुकामकृत् ॥७॥
हे दिव्य सोमरस ! शुत्रनाशक, सर्वद्रष्टा, देवताको इच्छाअनुसार काम गर्ने तिमीले हाम्रा गाईलाई सुखी बनाएर राख।

इन्द्राय सोम पातवे मदाय परि षिच्यसे। मनश्चिन्मनसस्पतिः ॥८॥
यो सोम मनमा रमाउने, मनका अधिपति इन्द्रदेवले पान गर्नका लागि, उनैको खुसी बढाउनका लागि तयार पारेपछि पात्रमा एकत्र हुने गर्दछ।

पवमान सुवीर्यं रयिं सोम रिरीहि नः। इन्दविन्द्रेण नो युजा ॥९॥
हे शोधित हुने गरेका पवित्र सोमरस ! उत्तम तेजस्वितायुक्त भएर तिमी आफ्ना सहायक इन्द्रदेवबाट हामीलाई चाहिएको कुरो दिलाऊ।

[सूक्त - १२]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

सोमा असृग्रमिन्दवः सुता ऋतस्य सादने। इन्द्राय मधुमत्तमाः ॥१॥
यज्ञका लागि शोधन गरेर बनाएको मिठो रसयुक्त सोम इन्द्रदेवका लागि प्रस्तुत गर्दछौँ।

अभि विप्रा अनूषत गावो वत्सं न मातरः। इन्द्रं सोमस्य पीतये ॥२॥
हे ऋत्विक् हो ! बाछो भेट्न गाई हतारिएझैं सोमपानका लागि इन्द्रदेवको स्तुति गर।

मदच्युत्क्षेति सादने सिन्धोरूर्मा विपश्चित्। सोमो गौरी अधि श्रितः ॥३॥
आनन्द दिने सोम यज्ञस्थलमा प्रतिष्ठित हुन्छ। यसले नदीको तरङ्गजस्तै वाणीलाई तरङ्गित गर्दछ।

दिवो नाभा विचक्षणोऽव्यो वारे महीयते। सोमो यः सुक्रतुः कविः ॥४॥
असल काम गर्ने र ज्ञानयुक्त सोम अन्तरिक्षको नाभीजस्तै चालनीबाट विशुद्ध भएर महत्त्वपूर्ण बनेको छ।

यः सोमः कलशेष्वाँ अन्तः पवित्र आहितः। तमिन्दुः परि षस्वजे ॥५॥
पवित्र भएर कलशमा बसेको सोमरसमा चन्द्रमाका असल गुणहरू सञ्चार हुन्छन्।

प्र वाचमिन्दुरिष्यति समुद्रस्याधि विष्टपि। जिन्वन् कोशं मधुश्चुतम् ॥६॥
मिठो सोमरस आकाशमा प्रवेश गरेर शब्द गर्दै कलशलाई पूरै रूपमा भराउँछ।

नित्यस्तोत्रो वनस्पतिर्धीनामन्तः सबर्दुघः। हिन्वानो मानुषा युगा ॥७॥
नित्य स्तुति गरिने, वनका स्वामी सोमदेव असल मानिसलाई सङ्गठित हुन प्रेरणा प्रदान गरुन् र मधुरभाषी हार्दिक स्तुति स्वीकार गरुन्।

अभि प्रिया दिवस्पदा सोमो हिन्वानो अर्षति। विप्रस्य धारया कविः ॥८॥
ज्ञानीलाई अन्तरिक्षबाट प्रेरित गराउँदै ज्ञानवर्द्धक सोम धाराका रूपमा यज्ञमा आएर प्रतिष्ठित हुन्छ।

आ पवमाना धारय रयिं सहस्रवर्चसम्। अस्मे इन्दो स्वाभुवम् ॥९॥
हे विशुद्ध सोमदेव ! हामीलाई हजारौं गुणसम्पन्न धाम, ऐश्वर्य र अधिकारयुक्त बनाऊ।

[सूक्त - १३]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

सोमः पुनानो अर्षति सहस्रधारो अत्यविः। वायोरिन्द्रस्य निष्कृतम् ॥१॥
हजारौं धाराका रूपमा शोधक यन्त्रले शोधित सोम वायु र इन्द्रदेवले पान गर्नका लागि असल पात्रमा स्थिर हुन्छ।

पवमानमवस्यवो विप्रमभि प्र गायत। सुष्वाणं देववीतये ॥२॥
संरक्षणको कामना गर्ने हे याजक हो ! सबैलाई पवित्र गराउने, विशेष आनन्द प्रदान गर्ने, देवताले पान गर्न योग्य र प्रशोधित सोमलाई सबैले सम्मानपूर्वक स्तुति गर।

**पवन्ते वाजसातये सोमाः सहस्रपाजसः । गृणाना देववीतये ॥३॥**

अन्न प्रदान गरेर स्तुत्य, देवतासरिको, हजारौं बल बढाउने सोमरस शोधित गर्दिं छ।

**उत नो वाजसातये पवस्व बृहतीरिषः । द्युमदिन्दो सुवीर्यम् ॥४॥**

हे सोमदेव ! जीवनसङ्ग्रामको सफलताका लागि हामीलाई असल अन्न प्रदान गर र तेजस्वी एवं सामर्थ्यशील बनाऊ।

**ते नः सहस्रिणं रयिं पवन्तामा सुवीर्यम् । सुवाना देवास इन्दवः ॥५॥**

पेलेर खस्दै गरेका दिव्य सोमरसले असङ्ख्य ऐश्वर्य र उत्तम सामर्थ्य प्रदान गरोस्।

**अत्या हियाना न हेतृभिरसृग्रं वाजसातये । वि वारमव्यमाशवः ॥६॥**

युद्धस्थलमा जाँदै गरेको अश्वझैं प्रेरित सोम ऋत्विक्‌हरू तीव्र गतिले शोधित गर्दछन्।

**वाश्रा अर्षन्तीन्दवोऽभि वत्सं न धेनवः । दधन्विरे गभस्त्योः ॥७॥**

बाछो खोज्न कराउँदै कुदेका गाईको जस्तै शब्द गरेर सोमरस कलशमा प्रवेश गर्दछ र त्यसैलाई ऋत्विक्‌हरू हातमा लिन्छन्।

**जुष्ट इन्द्राय मत्सरः पवमान कनिक्रदत् । विश्वा अप द्विषो जहि ॥८॥**

इन्द्रदेवलाई खुसी गर्ने हे सोम ! पवित्र भएर हल्ला गर्दै शत्रुको विकृति विनाश गर।

**अपघ्नन्तो अराव्णः पवमानाः स्वर्दृशः । योनावृतस्य सीदत ॥९॥**

हे सोम ! दान नदिने स्वार्थीलाई नाश गरेपछि तेजस्वी रूपमा यज्ञस्थलमा आएर बस।

[सूक्त – १४]

**ऋषि** – काश्यप । **देवता** – पवमान सोम । **छन्द** – गायत्री ।

**परि प्रासिष्यदत्कविः सिन्धोरूर्मावधि श्रितः । कारं बिभ्रत् पुरुस्पृहम् ॥१॥**

बुद्धिवर्द्धक, प्रशंसनीय, याजकलाई पोषण गर्ने, नदीका लहरमा मिसिने सोमरस पात्रमा स्थिर भएको छ।

**गिरा यदी सबन्धवः पञ्च व्राता अपस्यवः । परिष्कृण्वन्ति धर्णसिम् ॥२॥**

भ्रातृभावले रहने पाँचै वर्णका मानिस यज्ञीय कर्मको कामना गर्दै सबैका लागि पोषक सोमदेवलाई राम्रो स्तुति गर्दछन्।

**आदस्य शुष्मिणो रसे विश्वे देवा अमत्सत । यदी गोभिर्वसायते ॥३॥**

सोमरस निकालेर गाईको दुध मिसाएपछि बलवर्द्धक सोम पिएर देवता खुसी हुन्छन्।

**निरिणानो वि धावति जहच्छर्याणि तान्वा । अत्रा सं जिघ्नते युजा ॥४॥**

छानिँदै गरेको सोमरस चालनी भिजाउँदै प्वालबाट तलतिर छिर्दछ र सखारूपमा रहेका इन्द्रदेवकहाँ पुग्दछ।

**नप्तीभिर्यो विवस्वतः शुभ्रो न मामृजे युवा । गाः कृण्वानो न निर्णिजम् ॥५॥**

याज्ञिक यजमानका औँलाले केलाएको सोमरस गाईको दुध मिसाउँदा सेतो, दीप्तिमान्, तरुण अश्वजस्तै वा दुधजस्तै देखिन्छ।

**अति श्रिती तिरश्चता गव्या जिगात्यण्व्या । वग्नुमियर्ति यं विदे ॥६॥**

औँलाले च्यापेर निचोर्दै गाईको दुधमा मिसिन वरिपरिबाट तल झर्छ। भाँडामा पर्दाखेरि आवाज आउँछ।

**अभि क्षिपः समग्मत मर्जयन्तीरिषस्पतिम् । पृष्ठा गृभ्णत वाजिनः ॥७॥**

सोमरस केलाइरहेका औँला आपसमा मिलेर बलशाली सोमलाई समाउँछन् र त्यसलाई सफा बनाउँछन्।

**परि दिव्यानि मर्मृशद्विश्वानि सोम पार्थिवा । वसूनि याह्यस्मयुः ॥८॥**

हे दिव्य सोमदेव ! सम्पूर्ण पृथिवीको ऐश्वर्य लिएर हामीकहाँ तिमी आऊ।

[सूक्त – १५]

**ऋषि** – काश्यप । **देवता** – पवमान सोम । **छन्द** – गायत्री ।

**एष धिया यात्यण्व्या शूरो रथेभिराशुभिः । गच्छन्निन्द्रस्य निष्कृतम् ॥१॥**

औँलाले निचोरिएको शक्तिशाली यो सोम रथबाट तीव्र गतिमा विवेकपूर्वक इन्द्रदेवका नजिकमा पुग्दछ।

एष पुरू धियायते बृहते देवातातये। यत्रामृतास आसते ॥२॥
देवताहरूबाट अधिष्ठित, असल सोम यज्ञस्थलमा असङ्ख्य कर्महरू स्वयं सम्पन्न गर्ने अभिलाषा भएको हुन्छ।

एष हितो वि नीयतेऽन्तः शुभ्रावता पथा। यदी तुञ्जन्ति भूर्णयः ॥३॥
हविष्यान्नका रूपमा प्रयुक्त सोम यज्ञस्थलमा ल्याइन्छ र त्यहाँबाट अध्वर्युहरूले केलाएर देवतालाई चढाउँछन्।

एष शृङ्गाणि दोधुवच्छिशीते यूथ्योऽ वृषा। नृम्णा दधान ओजसा ॥४॥
बलिया साँढेले पशुका बथानमा बल देखाएभैं ऐश्वर्यशाली सोमले सामर्थ्य प्रकट गर्छ।

एष रुक्मिभिरीयते वाजी शुभ्रेभिरंशुभिः। पतिः सिन्धूनां भवन् ॥५॥
सेतो रश्मियुक्त, रसको अधिपति, प्रवाहमान, शक्तिशाली सोम वेगले प्रवाहित भएर उपासकका नजिक पुग्दछ।

एष वसूनि पिब्दना परुषा ययिवाँ अति। अव शादेषु गच्छति ॥६॥
आफ्ना सामर्थ्यले दुष्टलाई दुःख दिँदै यस सोमले अनुशासित गराउँछ र हिंस्रकको विनाश गर्दछ।

एतं मृजन्ति मर्ज्यमुप द्रोणेष्वायवः। प्रचक्राणं महीरिषः ॥७॥
रसयुक्त अन्न उत्पादक, शोधित, सोम ऋत्विक्ले केलाएर कलशमा एकत्र गर्दछन्।

एतमु त्यं दश क्षिपो मृजन्ति सप्त धीतयः। स्वायुधं मदिन्तमम् ॥८॥
असल आनन्ददायी शक्ति धारण गर्ने हरियो आभायुक्त सोम दस औँला र सात ऋत्विक्ले निचोरेपछि शोधित हुन्छ।

[सूक्त - १६]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

प्र ते सोतार ओण्योऽ रसं मदाय घृष्वये। सर्गो न तक्त्येतशः ॥१॥
हे सोमदेव ! याज्ञिकहरू द्युलोक र पृथिवीका माध्यमा शत्रु संहार गर्ने उद्देश्यले उत्साह बढाउनका लागि तिम्रो रस निकाल्दछन्।

क्रत्वा दक्षस्य रथ्यमपो वसानमन्धसा। गोषामण्वेषु सश्चिम ॥२॥
अन्नको पोषक शक्तियुक्त, बलवर्द्धक सोमलाई सत्कर्मका शक्तिले प्राप्त गर्नका लागि जल र गाईको दुधसित मिसाउँछन्। त्यसलाई हाम्रा औँलाले लिन्छन्।

अनप्तमप्सु दुष्टरं सोमं पवित्र आ सृज। पुनीहीन्द्राय पातवे ॥३॥
हे याजक हो ! शत्रुले नभेट्ने गरी, दुष्टले आक्रमण गर्न नसक्ने गरी जल मिसाएको सोमरस टाढाका इन्द्रदेवले पान गर्नका लागि चालनीले छानेर राख।

प्र पुनानस्य चेतसा सोमः पवित्रे अर्षति। क्रत्वा सधस्थमासदत् ॥४॥
शोधित गर्ने याज्ञिक बुद्धिपूर्वक सोम पवित्र गर्ने कार्यमा जुटेका हुन्छन्। यस्ता कामले सोम प्रतिष्ठित हुन्छ।

प्र त्वा नमोभिरिन्दव इन्द्र सोमा असृक्षत। महे भराय कारिणः ॥५॥
हे इन्द्रदेव ! तिमीलाई विनयपूर्वक सोम प्राप्त हुन्छ। यस सोमले तिमीलाई सङ्ग्राममा शत्रु नाश गर्नका लागि सक्षम बनाउँछ।

पुनानो रूपे अव्यये विश्वा अर्षन्नभि श्रियः। शूरो न गोषु तिष्ठति ॥६॥
शूरवीर घोडामा सुहाउँदिलो भएभैं शोधित सोम गाईका दुधमा सुहाउँदो हुन्छ।

दिवो न सानु पिप्युषी धारा सुतस्य वेधसः। वृथा पवित्रे अर्षति ॥७॥
आकाशको जलधारा पर्वतका चुलीमा परेभैं शोधित सोमका धारा भाँडामा बर्सन्छन्।

त्वं सोम विपश्चितं तना पुनान आयुषु। अव्यो वारं वि धावसि ॥८॥
हे सोमदेव ! समस्त मानिसमा जसले तिम्रो स्तुति गर्दछन्, तिमी तिनीहरूलाई संरक्षण गर्दछौ। तिमी स्वयं शोधनका लागि अनश्वर चालनीमा वेगका साथ पर्दछौ।

[सूक्त - १७]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**प्र निम्नेनेव सिन्धवो घ्नन्तो वृत्राणि भूर्णयः। सोमा असृग्रमाशवः ॥१॥**

नदीको प्रवाह ओरालोतिर गएझैं दुष्टको संहार गर्ने, शीघ्रगामी सोमरस वेगपूर्वक चाल्नीबाट तलतिर खस्दछ।

**अभि सुवानास इन्दवो वृष्टयः पृथिवीमिव। इन्द्रं सोमासो अक्षरन् ॥२॥**

पृथ्वीमा वर्षा भएझैं गरी शोधित सोमरस इन्द्रदेवकहाँ जान्छ।

**अत्यूर्मिर्मत्सरो मदः सोमः पवित्रे अर्षति। विघ्नन्रक्षांसि देवयुः ॥३॥**

उत्साहवर्द्धक, आनन्ददायी, स्फूर्तिदायक सोमरस राक्षस संहार गर्दै देवताकहाँ जानका लागि चाल्नीमा पस्छ।

**आ कलशेषु धावति पवित्रे परि षिच्यते। उक्थैर्यज्ञेषु वर्धते ॥४॥**

चाल्नीले चालेपछि यो सोमरस कलशमा जम्मा हुन्छ र यज्ञका स्तोत्रले बढ्दछ।

**अति त्री सोम रोचना रोहन्न भ्राजसे दिवम्। इष्णन्त्सूर्यं न चोदयः ॥५॥**

हे सोमदेव ! तिमी तीनै लोकभन्दा माथि रहेर द्युलोक प्रकाशित गर्दछौ र आफूखुसी सूर्यदेवलाई पनि प्रेरित गर्दछौ।

**अभि विप्रा अनूषत मूर्धन्यज्ञस्य कारवः। दधानाश्चक्षसि प्रियम् ॥६॥**

सोमरस मन पराउने कर्मनिष्ठ विद्वान् याज्ञिक यज्ञका मुख्य भागमा बसेर यज्ञ गर्दछन्।

**तमु त्वा वाजिनं नरो धीभिर्विप्रा अवस्यवः। मृजन्ति देवतातये ॥७॥**

आफ्नो संरक्षणको कामना भएका ज्ञानीहरू बुद्धियुक्त कर्मले अन्नयुक्त सोमलाई यज्ञका लागि शोधित गर्दछन्।

**मधोर्धारामनु क्षर तीव्रः सधस्थमासदः। चारुर्ऋताय पीतये ॥८॥**

हे सोमदेव ! शोधनस्थलमा मधुर रसको धाराका रूपमा तिमी जम्मा भइदेऊ। देवताले पान गर्नका लागि र यज्ञका लागि तिमी प्रवाहित होऊ।

[सूक्त - १८]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**परि सुवानो गिरिष्ठाः पवित्रे सोमो अक्षाः। मदेषु सर्वधा असि ॥१॥**

पवित्र कलशमा सोमरस निकालिएको छ। हे सोमदेव ! तिमी पर्वतमा उत्पन्न हुन्छौ, रस निकालेपछि आनन्द दिन्छौ र सर्वश्रेष्ठ छौ।

**त्वं विप्रस्त्वं कविर्मधु प्र जातमन्धसः। मदेषु सर्वधा असि।।२॥**

हे सोमदेव ! तिमी ज्ञानवान्, दूरदर्शी र अन्नबाट उत्पन्न भएको पोषक तत्त्व प्रदान गर्ने हौ। आनन्ददायक रसमा तिम्रो स्थान सर्वोत्तम छ।

**तव विश्वे सजोषसो देवासः पीतिमाशत। मदेषु सर्वधा असि ॥३॥**

हे सोमदेव ! सङ्गठन शक्तिले क्रियाशील देवताहरू तिम्रो रस सेवन गर्ने रहर गर्दछन्। आनन्ददायक रसमा तिम्रो स्थान सर्वोत्तम छ।

**आ यो विश्वानि वार्या वसूनि हस्तयोर्दधे। मदेषु सर्वधा असि ॥४॥**

हे सोमदेव ! तिमी अनेकौं किसिमका ऐश्वर्य प्रदान गर्दछौ। आनन्ददायक रसमा तिम्रो स्थान सर्वोत्तम छ।

**य इमे रोदसी मही सं मातरेव दोहते। मदेषु सर्वधा असि ॥५॥**

मातापितासरहका द्युलोक र पृथिवी दुवैलाई तिमी पुत्रझैं सुख प्रदान गर्दछौ। हे सोमदेव ! आनन्ददायक रसमा तिम्रो स्थान सर्वोत्तम छ।

**परि यो रोदसी उभे सद्यो वाजेभिरर्षति। मदेषु सर्वधा असि ॥६॥**

द्युलोक र पृथिवी दुवै लोकलाई सधैं अन्नले पूरा गराउने आनन्ददायक रसमा तिम्रो स्थान सर्वोत्तम छ।

स शुष्मी कलशेष्वा पुनानो अचिक्रदत्। मदेषु सर्वधा असि ॥७॥
बल बढाउने र शोधित हुँदा कलशमा शब्द गर्दै प्रवाहित हुने आनन्ददायक रसमा तिम्रो स्थान सर्वोत्तम छ।

[सूक्त – १९]

ऋषि – काश्यप। देवता – पवमान सोम। छन्द – गायत्री।

यत्सोम चित्रमुक्थ्यं दिव्यं पार्थिवं वसु। तन्नः पुनान आ भर ॥१॥
पवित्रतामा परिणत हुने हे सोमदेव ! यस संसारमा भएका अद्भुत र प्रशंसनीय दिव्य वैभव हामीलाई देऊ।

युवं हि स्थः स्वर्पती इन्द्रश्च सोम गोपती। ईशाना पिप्यतं धियः ॥२॥
गाईका धनी तथा ऐश्वर्यशाली हे सोम र इन्द्रदेव ! तिमीहरू दुवै निश्चित रूपले यस संसारका रक्षक हौ। हामी सबैको बुद्धि असल मार्गमा लगाओ।

वृषा पुनान आयुषु स्तनयन्नधि बर्हिषि। हरिः सन्योनिमासदत् ॥३॥
याजकको जीवन पवित्र गराउने हे हरियो आभासम्पन्न सोमदेव ! शब्द गर्दै तिमी आफ्ना आसनमा स्थिर होऊ।

अवावशन्त धीतयो वृषभस्याधि रेतसि। सूनोर्वत्सस्य मातरः ॥४॥
बलशाली सोमको तेज उत्पादन गर्ने तेजको पृथ्वीको रहर छोरो पाउन मन गर्ने आमाको जस्तै हुनाले पृथ्वीले सोम धारण गरेको हुन्छ।

कुविद्वृषण्यन्तीभ्यः पुनानो गर्भमादधत्। याः शुक्रं दुहते पयः ॥५॥
पवित्र भएर तेजस्वी पय दोहन गर्ने, अन्तरिक्षीय वर्षाको कामना गर्ने र स्वयं पवित्र प्रकृतिले सोमलाई गर्भमा स्थापना गर्दछ।

उप शिक्षापतस्थुषो भियसमा धेहि शत्रुषु। पवमान विदा रयिम् ॥६॥
हे सोमदेव ! हामीबाट टाढा रहने मित्रलाई तिमी हाम्रा नजिकै ल्याइदेऊ। हाम्रा शत्रुलाई भयातुर बनाइदेऊ र हामीलाई धन देऊ।

नि शत्रोः सोम वृष्ण्यं नि शुष्मं नि वयस्तिर। दूरे वा सतो अन्ति वा ॥७॥
हे सोम ! हाम्रा नजिक वा टाढाका सबै शत्रुको सामर्थ्य, तेज र अन्न नष्ट गराऊ।

[सूक्त – २०]

ऋषि – काश्यप। देवता – पवमान सोम। छन्द – गायत्री।

प्र कविर्देववीतयेऽव्यो वारेभिरर्षति। साह्वान्विश्वा अभि स्पृधः ॥१॥
देवतालाई प्रदान गर्नका लागि ज्ञानवर्द्धक सोम उत्तम तरिकाले केलाइन्छ। यो विकृति नाशक हुनाले सबै शत्रुलाई परास्त गर्दछ।

स हि ष्मा जरितृभ्य आ वाजं गोमन्तमिन्वति। पवमानः सहस्रिणम् ॥२॥
अत्यन्त शुद्ध दिव्य सोमले स्तुति गर्ने याजकलाई धनधान्य प्रदान गरेर सन्तुष्ट गर्दछ।

परि विश्वानि चेतसा मृशसे पवसे मती। स नः सोम श्रवो विदः ॥३॥
हे राम्ररी केलाइएका वन्दनीय सोमदेव ! विचार गरेर हामीलाई अन्नको भण्डार देऊ।

अभ्यर्ष बृहद्यशो मघवद्भ्यो ध्रुवं रयिम्। इषं स्तोतृभ्य आ भर ॥४॥
हे दिव्य सोमदेव ! स्तुति गर्ने धनवान् साधकलाई महान् यश, स्थायी निधि र अन्नको भण्डार प्रदान गर।

त्वं राजेव सुव्रतो गिरः सोमा विवेशिथ। पुनानो वह्ने अद्भुत ॥५॥
सत्कर्ममा लागेका, सद्भावनायुक्त, पवित्र हृदयका स्वामीजस्ता हे दिव्य सोमदेव ! याजकले प्रस्तुत गरेको असल वचन स्वीकार गर।

स वह्निरप्सु दुष्टरो मृज्यमानो गभस्त्योः। सोमश्चमूषु सीदति ॥६॥
यज्ञ सम्पन्न गराउने, हत्केलाले शुद्ध गरिएको, जल मिश्रित सोम भाँडामा स्थिर हुन्छ।

क्रीडुर्मखो न मंहयुः पवित्रं सोम गच्छसि। दधत्स्तोत्रे सुवीर्यम् ॥७॥
निरन्तर चल्ने यज्ञको परमार्थमा निरन्तर लागेर रमाउने हे सोमदेव ! स्तोतालाई शौर्यको पराक्रम प्रदान गर्दै तिमी शुद्ध हुन्छौ।

[सूक्त - २१]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**एते धावन्तीन्दवः सोमा इन्द्राय घृष्वयः। मत्सरासः स्वर्विदः ॥१॥**

आनन्द बढाउन, ज्ञान दिन र युद्धको प्रेरणा दिनका लागि तेजस्वी सोम इन्द्रदेवसित जाने गर्दछन्।

**प्रवृण्वन्तो अभियुजः सुष्वये वरिवोविदः। स्वयं स्तोत्रे वयस्कृतः ॥२॥**

सोमरसले स्तोतालाई धनधान्यले पूर्ण गर्दछ र शोधन गर्नेलाई विशेष प्रकारले उपयोगी सहायता गर्दछ।

**वृथा क्रीळन्त इन्दवः सधस्थमभ्येकमित्। सिन्धोरूर्मा व्यक्षरन् ॥३॥**

सजिलैसित पात्रमा राखिएको सोमरस नदीको पानी रमाएझैं खसेर एकत्रित हुन्छ।

**एते विश्वानि वार्या पवमानास आशत। हिता न सप्तयो रथे ॥४॥**

रथमा नारेको घोडाजस्तै शोधित सोमरस जोसुकैले स्वीकार गर्ने धन प्रदान गर्दछ।

**आस्मिन्पिशङ्गमिन्दवो दधाता वेनमादिशे। यो अस्मभ्यमरावा ॥५॥**

हे सोमदेव ! धन दान गर्ने याज्ञिकलाई अनेकौं खालका धन त्यसै उद्देश्यले प्रदान गर।

**ऋभुर्न रथ्यं नवं दधाता केतमादिशे। शुक्राः पवध्वमर्णसा ॥६॥**

हे सोमदेव ! रथ चलाउनका लागि ऋभुहरूले नयाँ र उत्तम सारथी खटाएझैं हामीलाई यज्ञको काम पूरा गर्नमा खटाऊ। शोधन गरिएको सोमरस पानीसँगै पवित्र होस्।

**एत उ त्ये अवीवशन्काष्ठां वाजिनो अक्रत। सतः प्रासाविषुर्मतिम् ॥७॥**

यज्ञको कामना गर्ने बलवान् सोमरस यज्ञस्थलमै प्रतिष्ठित हुन्छ। उसले याज्ञिकको बुद्धि यज्ञ गर्नका लागि प्रेरित गर्छ।

[सूक्त - २२]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**एते सोमास आशवो रथा इव प्र वाजिनः। सर्गाः सृष्टा अहेषत ॥१॥**

सोम शोधित हुँदा रथ वा अश्वझैं शब्द गर्दै चाल्नीबाट द्रुतगतिले तलतिर आउँछ।

**एते वाता इवोरवः पर्जन्यस्येव वृष्टयः। अग्नेरिव भ्रमा वृथा ॥२॥**

सोम पर्जन्यजस्तै र अग्निको ज्वालाजस्तै वायुवेगले गमन गर्दछ।

**एते पूता विपश्चितः सोमासो दध्याशिरः। विपा व्यानशुर्धियः ॥३॥**

शोधित सोमरसलाई ज्ञानवर्द्धक दहीमा मिसाउँछन्। त्यसपछि त्यो अझै ज्ञानवर्द्धक भएर बुद्धिमत्तापूर्ण गरिएका यज्ञ कर्ममा पुग्दछ।

**एते मृष्टा अमर्त्याः ससृवांसो न शश्रमुः। इयक्षन्तः पथो रजः ॥४॥**

पवित्र र अमृतजस्तै शोधित सोमरस शोधन गर्दाखेरि शोधक यन्त्रभन्दा तलतिर निरन्तर नथाकीकन बगिरहेको हुन्छ।

**एते पृष्ठानि रोदसोर्विप्रयन्तो व्यानशुः। उतेदमुत्तमं रजः ॥५॥**

सोमरस स्वर्गलोक र पृथिवीका पृष्ठ भागसम्म विभिन्न प्रकारले गमन गर्दै सबै ठाउँमा पुग्छ। यही उत्तम सोमरस द्युलोक पनि पुगेको हुन्छ।

**तन्तुं तन्वानमुत्तममनु प्रवत आशत। उतेदमुत्तमाय्यम् ॥६॥**

यज्ञको विस्तार गर्ने उत्कृष्ट सोम नदीका जलमा मिसिन्छ। त्यही सोमले असल यज्ञ पूर्ण गराउँछ।

**त्वं सोम पणिभ्य आ वसु गव्यानि धारयः। ततं तन्तुमचिक्रदः ॥७॥**

हे सोमदेव ! तिमी पशुसम्बन्धी काम गर्ने वा व्यापार गर्नेहरूसित दुध, दही घिउ आदि पदार्थ लिएर यज्ञस्थलमा प्रतिष्ठित गराउँछौ र यज्ञ पूर्ण गराउँदै कीर्ति फिंजाऊ।

[सूक्त - २३]

ऋषि - काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**सोमा असृग्रमाशवो मधोर्मदस्य धारया। अभि विश्वानि काव्या ॥१॥**

स्तोताले अनेकौं किसिमका स्तोत्रले स्तुति गर्दै मिठो रसको धाराका रूपमा द्रुतगतिले सोमरस निकाल्छन्।

अनु प्रत्नास आयवः पदं नवीयो अक्रमुः। रुचे जनन्त सूर्यम् ॥२॥
अत्यन्त पुराना र निरन्तर प्रवाहमान नौला पद प्राप्त गर्नेहरूले सूर्यलाई प्रकाशका लागि उत्पन्न गर्दछन्।

आ पवमान नो भरार्यो अदाशुषो गयम्। कृधि प्रजावतीरिषः ॥३॥
हे सोमदेव ! तिमी शत्रुजस्ता अनुदारको धन र प्रजाले युक्त अन्न हामीलाई देऊ।

अभि सोमास आयवः पवन्ते मद्यं मदम्। अभि कोशं मधुश्चुतम् ॥४॥
शोधित सोमरस आनन्दवर्द्धक हुन्छ। यस मधुर रसलाई पात्रमा एकत्रित गर्दछन्।

सोमो अर्षति धर्णसिर्दधान इन्द्रियं रसम्। सुवीरो अभिशस्तिपाः ॥५॥
सर्वोत्तम बलशाली, हरेक दुःखबाट बचाउने, इन्द्रिय शक्ति बढाइदिने, धारणा शक्तिले युक्त यो सोमरस पात्रमा एकत्रित हुन्छ।

इन्द्राय सोम पवसे देवेभ्यः सधमाद्यः। इन्दो वाजं सिषाससि ॥६॥
हे सोमदेव ! तिमी यज्ञका उपयुक्त छौ। इन्द्रदेव र अन्य सबै देवताका लागि नै तिम्रो रस निकालिन्छ। हाम्रा लागि तिमी अन्नदाता हौ।

अस्य पीत्वा मदानामिन्द्रो वृत्राण्यप्रति। जघान जघनच्च नु ॥७॥
आनन्ददायी, उत्साहवर्द्धक सोमरस पान गरेर अजेय भएका इन्द्रदेवले चारै तिरबाट घेरिराखेका शत्रु नष्ट गरे, पछि पनि यसै गरिरहून्।

[सूक्त – २४]

ऋषि – काश्यप। देवता – पवमान सोम। छन्द – गायत्री।

प्र सोमासो अधन्विषुः पवमानास इन्दवः। श्रीणाना अप्सु मृञ्जत ॥१॥
दुध आदि पोषक तत्त्वले युक्त शीतल सोमरस पवित्र भएर जलसँगै तल राखिएका पात्रमा एकत्रित भइरहेको छ।

अभि गावो अधन्विषुरापो न प्रवता यतीः। पुनाना इन्द्रमाशत ॥२॥
शुद्ध भएको सोमरस तलका पात्रमा पुगेर अडिँदै छ। देवराज इन्द्र यस पवित्र रसको पान गर्दछन्।

प्र पवमान धन्वसि सोमेन्द्राय पातवे। नृभिर्यतो वि नीयसे ॥३॥
इन्द्रदेवको उत्साह बढाउने हे सोमदेव ! शुद्धीकरणको प्रक्रिया पूरा भएपछि तिमीलाई ऋत्विक्हरूले यज्ञका वेदीमा पुऱ्याउँछन्।

त्वं सोम नृमादनः पवस्व चर्षणीसहे। सस्निर्यो अनुमाद्यः ॥४॥
प्रशंसायोग्य र संस्कारित हे सोमदेव ! सबै मानिसका लागि आनन्द बढाउने तिमीलाई याजकले धारण गरेपछि पवित्र होऊ।

इन्दो यदद्रिभिः सुतः पवित्रं परिधावसि। अरमिन्द्रस्य धाम्ने ॥५॥
हे सोमदेव ! ढुङ्गाले पेलेर निकालेपछि तिमीलाई चाल्नीले शुद्ध गराउँछन्। त्यसपछि इन्द्रदेवले पिउनका लागि योग्य हुन्छौ।

पवस्व वृत्रहन्तमोक्थेभिरनुमाद्यः। शुचिः पावको अद्भुतः ॥६॥
आश्चर्यजनक तरिकाले शत्रु विनाश गर्ने, श्रेष्ठ वचनले वन्दना गर्न योग्य हे सोमदेव ! तिमी शुद्ध र पवित्र भइदेऊ।

शुचिः पावक उच्यते सोमः सुतस्य मध्वः। देवावीरघशंसहा ॥७॥
विधिपूर्वक तयार गरिएको शुद्ध, संस्कारित र पवित्र सोमरस देवतालाई सन्तुष्टि दिने र दुष्टलाई विनाश गर्ने मानिन्छ।

[सूक्त – २५]

ऋषि – दृढच्युत आगस्त्य। देवता – पवमान सोम। छन्द – गायत्री।

पवस्व दक्षसाधनो देवेभ्यः पीतये हरे। मरुद्भ्यो वायवे मदः ॥१॥
हे हरियो आभाले सम्पन्न सोमदेव ! तिमी हर्ष र शक्तिका साधनजस्ता छौ। देवता र मरुत्हरूले पिउनका लागि कलशमा स्थित होऊ।

**पवमान धिया हितोऽभि योनिं कनिक्रदत्। धर्मणा वायुमा विश ॥२॥**

राम्रोसित विचारपूर्वक स्थापित गरिएका, हे संस्कारयुक्त सोमदेव ! तिमी आफ्ना स्वाभाविक गुणले वायुसँगै संयुक्त भएर कलशमा प्रतिष्ठित होऊ।

**सं देवैः शोभते वृषा कविर्योनावधि प्रियः। वृत्रहा देववीतमः ॥३॥**

ज्ञान र बलले सम्पन्न, शुद्ध, संस्कारित हुनाले सबैका परम प्रिय, कसैका बन्धनमा नहरने सोमदेव, देवताहरूका माझमा सुशोभित हुँदै छन्।

**विश्वा रूपाण्याविशन्पुनानो याति हर्यतः। यत्रामृतास आसते ॥४॥**

पवित्र सोम सबै रूपमा प्रविष्ट भएर जहाँ देवताहरू रहन्छन्, उनीहरूकै नजिकमा सुशोभित भएर जान्छ।

**अरुषो जनयन्गिरः सोमः पवत आयुषक्। इन्द्रं गच्छन्कविक्रतुः ॥५॥**

मेधावी सोमरस प्रीतिपूर्वक इन्द्रदेवका निकट जान्छ। तेजस्वी सोमलाई शोधित गर्दाखेरि शब्दको नाद हुन्छ।

**आ पवस्व मदिन्तम पवित्रं धारया कवे। अर्कस्य योनिमासदम् ॥६॥**

आनन्द प्रदान गर्ने कान्तिमान् हे सोमदेव ! पूजा गर्नका लागि योग्य इन्द्रदेवको आश्रय प्राप्त गर्नका लागि तिमी धाराका रूपमा शोधित भएर पवित्र बन।

### [सूक्त - २६]

**ऋषि** – इध्मवाह दार्ढच्युत। **देवता** – पवमान सोम। **छन्द** – गायत्री।

**तममृक्षन्त वाजिनमुपस्थे अदितेरधि। विप्रासो अण्व्या धिया ॥१॥**

विद्वान्हरूका सूक्ष्म बुद्धिले बलशाली सोमलाई अदितिका काखमा उत्तम प्रकारले पवित्र बनाउँछ।

**तं गावो अभ्यनूषत सहस्रधारमक्षितम्। इन्दुं धर्तारमा दिवः ॥२॥**

सूर्य आदि लोक धारण गर्ने, कहिल्यै क्षीण नहुने, हजारौं धारा भएर बग्ने सोमदेवलाई हामी स्तोत्रले स्तुति गर्दछौं।

**तं वेधां मेधयाह्यन्पवमानमधि द्यवि। धर्णसिं भूरिधायसम् ॥३॥**

सबैका आधार, सबैलाई धारण गर्ने र सबैका आश्रय दाता सोमदेवलाई आफ्ना बुद्धिका बलले द्युलोकका नजिकैको उच्च स्थानमा प्रतिष्ठित गर्दछन्।

**तमह्यन्भुरिजोर्धिया संवसानं विवस्वतः। पतिं वाचो अदाभ्यम् ॥४॥**

वाणीका अधिष्ठाता, अविनाशी सोमलाई याज्ञिकहरूले हातमा धारण गरेर यज्ञस्थलमा पुऱ्याउने गर्दछन्।

**तं सानावधि जामयो हरिं हिन्वन्त्यद्रिभिः। हर्यतं भूरिचक्षसम् ॥५॥**

याजकहरू उच्च स्थानमा बसेर हरियो आभायुक्त सोमलाई ढुङ्गाले कुटेर दसै औंलाले रस निकाल्दछन्।

**तं त्वा हिन्वन्ति वेधसः पवमान गिरावृधम्। इन्दविन्द्राय मत्सरम् ॥६॥**

हे सोमदेव ! स्तोत्रले स्तुति गर्दा प्रशंसित हुने इन्द्रदेवलाई आनन्द प्रदान गर्नका लागि ज्ञानीहरू तिमीलाई प्रेरित गर्दछन्।

### [सूक्त - २७]

**ऋषि** - नृमेध आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**एष कविरभिष्टुतः पवित्रे अधि तोशते। पुनानो घ्नन्नप स्रिधः ॥१॥**

ज्ञानी र कविले स्तुति गर्ने, शोधित, विकारनाशक सोम तृप्ति प्रदान गर्ने खालको छ।

**एष इन्द्राय वायवे स्वर्जित्परि षिच्यते। पवित्रे दक्षसाधनः ॥२॥**

शक्तिवर्द्धक र स्वर्गीय सुख आफ्ना अधिकारमा राख्ने दिव्य सोमरस अन्तरिक्षमा छानिएर इन्द्रदेव र वायुका लागि तल आउँछ।

**एष नृभिर्वि नीयते दिवो मूर्धा वृषा सुतः। सोमो वनेषु विश्ववित् ॥३॥**

द्युलोकका उच्च भागबाट बर्सिने बलवान् सोम वनका विषयमा सबै जान्दछ। पेलेर तयार भएपछि अगुवा मानिसले ल्याउँछन्।

एष गव्युरचिक्रदत् पवमानो हिरण्ययुः । इन्दुः सत्राजिदस्तृतः ॥४॥
द्युलोकमा प्रतिष्ठित, शक्तिवर्द्धक, रसका रूपमा रहने, विश्वको जानेका सोमलाई वनका माध्यमबाट नै मानिसले प्रयोग गर्दछन्।

एष सूर्येण हासते पवमानो अधि द्यवि। पवित्रे मत्सरो मदः ॥५॥
पवित्र, आनन्द प्रदान गर्ने र प्रसन्नता प्रदान गर्ने सोमलाई सूर्यदेवले द्युलोकका शोधक चाल्नीमा स्थापित गर्दछन्।

एष शुष्म्यसिष्यददन्तरिक्षे वृषा हरिः। पुनान इन्दुरिन्द्रमा ॥६॥
अन्तरिक्षमा वर्षणील, बलवर्द्धक हरियो आभायुक्त सोमरस तल आएपछि पवित्र भएर इन्द्रदेवलाई प्रदान गरिन्छ।

[सूक्त - २८]

ऋषि - प्रियमेध आङ्गिरस। देवता - पवमान सोम। छन्द - गायत्री।

एष वाजी हितो नृभिर्विश्वविन्मनसस्पतिः। अव्यो वारं वि धावति ॥१॥
सर्वज्ञाता, मनका अधिपति, बलशाली सोमलाई यज्ञकर्ताले शुद्ध गरेपछि कलशमा प्रतिष्ठित गर्दछन्।

एष पवित्रे अक्षरत् सोमो देवेभ्यः सुतः। विश्वा धामान्याविशन् ॥२॥
देवताहरूका निमित्त उत्पन्न भएको सोम शुद्ध भएर देवताका शरीरमा व्याप्त हुन्छ।

एष देवः शुभायतेऽधि योनावमर्त्यः। वृत्रहा देववीतमः ॥३॥
देवताको प्रिय, देवत्व बढाउने, अविनाशी, शत्रुसंहारक सोम शोभायुक्त कलशमा छ।

एष वृषा कनिक्रदद्दशभिर्जामिभिर्यतः। अभि द्रोणानि धावति ॥४॥
दस औंलाले निचोरेको बलवर्द्धक सोम ठूलो शब्दका साथ कलशमा पस्दछ।

एष सूर्यमरोचयत् पवमानो विचर्षणिः। विश्वा धामानि विश्ववित् ॥५॥
सर्वद्रष्टा सोमरस विश्वका ज्ञाता हो उसले सबै ठाउँ र सूर्यदेवलाई प्रकाशित गर्दछ।

एष शुष्म्यदाभ्यः सोमः पुनानो अर्षति। देवावीरघशंसहा ॥६॥
देवताको रक्षक, पापीको संहारक, अविनाशी, शोधित, बलयुक्त सोम कलशमा पस्छ।

[सूक्त - २९]

ऋषि - नृमेध आङ्गिरस। देवता - पवमान सोम। छन्द - गायत्री।

प्रास्य धारा अक्षरन्वृष्णः सुतस्यौजसा। देवाँ अनु प्रभूषतः ॥१॥
बल बढाउने र देवतामाथि अनुकूल प्रभाव पार्ने सोमरसको प्रभावशाली धारा वेगपूर्व पात्रमा एकत्र हुन थाल्यो।

सप्तिं मृजन्ति वेधसो गृणन्तः कारवो गिरा। ज्योतिर्जज्ञानमुक्थ्यम् ॥२॥
देदीप्यमान, स्तुत्य, अश्वजस्तै वेगवान् सोमलाई मेधावी अध्वर्युहरू आफ्ना वाणीरूपी स्तुतिले शुद्ध गरिरहेका छन्।

सुषहा सोम तानि ते पुनानाय प्रभूवसो। वर्धा समुद्रमुक्थ्यम् ॥३॥
हे सम्पत्तिशाली र स्तुत्य सोमदेव ! तिमी पवित्रकर्ता र प्रचण्ड पराक्रमका कारण रक्षक हौ। समुद्रजस्तै यो पात्र पनि भराइदेऊ।

विश्वा वसूनि सञ्जयन्पवस्व सोम धारया। इनु द्वेषांसि सध्र्यक् ॥४॥
हे सोमदेव ! सबै धन जित्दै तिमी शुद्ध होऊ र हाम्रा सबै शत्रु हामीबाट टाढा भगाऊ।

रक्षा सु नो अररुषः स्वनात्समस्य कस्य चित्। निदो यत्र मुमुच्महे ॥५॥
हे सोमदेव ! अनुदार व्यक्ति, अन्य शत्रु र निन्दा गर्नेबाट हाम्रो जतनसाथ सुरक्षा गर, हामी शत्रुबाट सुरक्षित होऔँ।

एन्दो पार्थिवं रयिं दिव्यं पवस्व धारया। द्युमन्तं शुष्ममा भर ॥६॥
हे सोमदेव ! पृथ्वीमा आफ्ना धाराले रस प्रवाहित गर्दै तिमी अनेकौं किसिमका दिव्य धन प्रदान गर र तेजयुक्त बल पनि हामीलाई देऊ।

[सूक्त - ३०]

**ऋषि** - बिन्दु आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**प्र धारा अस्य शुष्मिणो वृथा पवित्रे अक्षरन्। पुनानो वाचमिष्यति ॥१॥**

बलशाली सोमको धारो स्तुति सुन्ने रहरले चाल्नीबाट पवित्र हुँदै प्रवाहित हुन्छ।

**इन्दुर्हियानः सोतृभिर्मृज्यमानः कनिक्रदत्। इयर्ति वग्नुमिन्द्रियम् ॥२॥**

शोधित गर्ने याज्ञिकले प्रेरित गरेको यो सोमरस शोधित हुँदाखेरि शब्दको नाद गर्दछ र इन्द्रियलाई यज्ञको काम गर्नका लागि प्रेरित गर्दछ।

**आ नः शुष्मं नृषाह्यं वीरवन्तं पुरुस्पृहम्। पवस्व सोम धारया ॥३॥**

हे सोमदेव ! पवित्र धारामा प्रवाहित हुँदै तिमी शत्रुको विनाश गर्ने, शौर्यवर्द्धक र सबैबाट पूज्य बल हामीलाई प्रदान गर।

**प्र सोमो अति धारया पवमानो असिष्यदत्। अभि द्रोणान्यासदम् ॥४॥**

पवित्र सोमरस पात्रमा स्थापित हुनका लागि धाराका रूपमा प्रवाहित हुन्छ।

**अप्सु त्वा मधुमत्तमं हरिं हिन्वन्त्यद्रिभिः। इन्दविन्द्राय पीतये ॥५॥**

हरियो आभासम्पन्न, अत्यन्त मधुर, जल मिश्रित, सोमरसलाई ढुङ्गामा कुटेर तयार गर्दछन्। त्यो इन्द्रदेवलाई पान गर्नका लागि प्रदान गर्दछन्।

**सुनोता मधुमत्तमं सोममिन्द्राय वज्रिणे। चारुं शर्धाय मत्सरम् ॥६॥**

हे याज्ञिकहरू हो ! वज्रधारी इन्द्रदेवको बल बढाउनका लागि आनन्ददायी र अत्यन्त मिठो सोमरस निकाल।

[सूक्त - ३१]

**ऋषि** - गोतम राहूगण। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**प्र सोमासः स्वाध्यः पवमानासो अक्रमुः। रयिं कृण्वन्ति चेतनम् ॥१॥**

शोधन गरिएको सोमरस ज्ञानवर्द्धक र स्फुर्ति प्रदान गर्ने खालको छ। त्यो उत्तम धन प्रदायक पनि हो।

**दिवस्पृथिव्या अधि भवेन्दो द्युम्नवर्धनः। भवा वाजानां पतिः ॥२॥**

हे सोमदेव ! तिमी द्युलोक र पृथिवीलोकमा अन्नको वृद्धि गर्ने खालका छौ। तिमी बलका संरक्षक पनि हौ।

**तुभ्यं वाता अभिप्रियस्तुभ्यमर्षन्ति सिन्धवः। सोम वर्धन्ति ते महः ॥३॥**

हे सोमदेव ! वायुले अनुगमन गरेर र नदीले तिम्रो अनुसरण गर्दै तिम्रो महत्त्वलाई विस्तार गराउँदै छन्।

**आ प्यायस्व समेतु ते विश्वतः सोम वृष्ण्यम्। भवा वाजस्य सङ्गथे ॥४॥**

हे सोमदेव ! प्रत्येक ठाउँमा तिमीलाई बल प्राप्त होस्। तिमी विस्तृत हुँदै सङ्ग्राममा हाम्रा लागि अन्न प्रदान गर्दछौ।

**तुभ्यं गावो घृतं पयो बभ्रो दुदुह्रे अक्षितम्। वर्षिष्ठे अधि सानवि ॥५॥**

तिम्रो स्थान सर्वोच्च छ। हे प्रजापालक सोमदेव ! गाईले तिमीलाई कहिल्यै नघट्ने दुध र घिउ प्रदान गर्दछन्।

**स्वायुधस्य ते सतो भुवनस्य पते वयम्। इन्दो सखित्वमुश्मसि ॥६॥**

भुवनका स्वामी हे सोमदेव ! हामी सबै खालका असल आयुधले युक्त भएर तिमीसित मित्रताको कामना गर्दछौं।

[सूक्त - ३२]

**ऋषि** - श्यावाश्व आत्रेय। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**प्र सोमासो मदच्युतः श्रवसे नो मघोनः। सुता विदथे अक्रमुः ॥१॥**

आनन्ददायक सोम पेलेर तयार भएपछि हाम्रो यज्ञमा अन्न र यशप्रदाता बनेर रहन्छ।

**आदीं त्रितस्य योषणो हरिं हिन्वन्त्यद्रिभिः। इन्दुमिन्द्राय पीतये ॥२॥**

शुद्ध हरियो आभायुक्त सोमरसलाई साधकले आफ्नै औंलाले निचोरेर इन्द्रदेवले पिउने योग्य बनाउँछन्।

आदीं हंसो यथा गणं विश्वस्यावीवशन्मतिम्। अत्यो न गोभिरज्यते॥३॥
हाँस बथानमा गएझैं सहज पाराले यो सोमरस विवेकशालीको बुद्धि प्रभावित गर्दछ।

उभे सोमावचाकशन्मृगो न तक्तो अर्षसि। सीदन्नृतस्य योनिमा॥४॥
हे सोमदेव ! तिमी द्युलोक र पृथ्वी दुवैलाई हेर्दै हरिणजस्तै तेजस्वी भएर यज्ञस्थलमा प्रतिष्ठित हुन्छौ।

अभि गावो अनूषत योषा जारमिव प्रियम्। अगन्नाजिं यथा हितम्॥५॥
युद्धमा जान लागेका वीर योद्धाको स्तुति गरेझैं र स्त्रीले आफ्ना प्रियतमको स्तुति गरेझैं हे सोमदेव ! हामी पनि मन्त्रले तिम्रो स्तुति गर्दछौं।

अस्मे धेहि द्युमद्यशो मघवद्भ्यश्च मह्यं च। सनिं मेधामुत श्रवः॥६॥
हे सोमदेव ! हामीलाई तेजस्वी बनाऊ याज्ञिकलाई अन्न, धन, बुद्धि र यश देऊ।

[सूक्त – ३३]

ऋषि – गोतम राहूगण। देवता – पवमान सोम। छन्द – गायत्री।

प्र सोमासो विपश्चितोऽपां न यन्त्यूर्मयः। वनानि महिषा इव॥१॥
बुद्धिवर्द्धक सोम पानीको छाल वा स्वाभाविक रूपमा वनमा जाने पशुझैं प्रवाहित छ।

अभि द्रोणानि बभ्रवः शुक्रा ऋतस्य धारया वाजं गोमन्तमक्षरन्॥२॥
खैरो रङ्गको सोमरस गाईको दुधरूपी अन्नसँग वा जलधारासँगै भाँडामा मिसाइन्छ।

सुता इन्द्राय वायवे वरुणाय मरुद्भ्यः। सोमा अर्षन्ति विष्णवे॥३॥
पेलेको तयारी सोमरस इन्द्र, वायु, वरुण, मरुत् र विष्णु आदि देवतालाई प्राप्त होस्।

तिस्रो वाच उदीरते गावो मिमन्ति धेनवः। हरिरेति कनिक्रदत्॥४॥
तीन किसिमका मन्त्र बोलेपछि धारक वाणीले स्वर प्रकट गर्दछ र त्यसै बेला मनोहर हरियो आभाले सम्पन्न सोमरस पनि शब्द गर्दै तल झर्दछ।

अभि ब्रह्मीरनूषत यह्वीर्ऋतस्य मातरः। मर्मृज्यन्ते दिवः शिशुम्॥५॥
द्युलोकमा उत्पन्न सोमलाई शोधित गर्दा महान् विद्वान्हरूले परमार्थपरायण बन्ने प्रेरणा दिने ऋचा उच्चारण गर्दछन्।

रायः समुद्रांश्चतुरोऽस्मभ्यं सोम विश्वतः। आ पवस्व सहस्रिणः॥६॥
हे सोमदेव ! सबै माध्यमबाट ऐश्वर्यका चारै समुद्र हाम्रा लागि उपलब्ध गराउन लागि तिमी हजारौं किसिमले प्रवाहित होऊ।

[सूक्त – ३४]

ऋषि – त्रित आप्त्य। देवता – पवमान सोम। छन्द – गायत्री।

प्र सुवानो धारया तनेन्दुर्हिन्वानो अर्षति। रुजद् दृळ्हा व्योजसा॥१॥
पेलेर तयार गरेको सोमरस व्यापक बलले युक्त भएर धारो बन्दै भाँडामा जम्मा हुन्छ। त्यसले आफ्नै शक्तिले शत्रुका निकै बलिया किल्ला पनि ध्वस्त पारिदिन्छ।

सुत इन्द्राय वायवे वरुणाय मरुद्भ्यः। सोमो अर्षति विष्णवे॥२॥
इन्द्र, वरुण, वायु, मरुत् र विष्णु आदि देवताहरूका लागि पेलेर तयार गरेको सोम पात्रमा जम्मा भएको छ।

वृषाणं वृषभिर्यतं सुन्वन्ति सोममद्रिभिः। दुहन्ति शक्मना पयः॥३॥
शक्ति लगाएर दुध दुहेझैं बल बढाउने शक्तियुक्त सोमरसलाई बलिया ढुङ्गाले कुटेर निचोर्ने गरिन्छ।

भुवत्त्रितस्य मर्ज्यो भुवदिन्द्राय मत्सरः। सं रूपैरज्यते हरिः॥४॥
त्रित ऋषिले शोधन गरेको हरियो आभासम्पन्न सोमरस गाईको दुधसित मिसाएर इन्द्रदेवलाई प्रदान गरिएको छ।

अभीमृतस्य विष्टपं दुहते पृश्निमातरः। चारु प्रियतमं हविः॥५॥
यज्ञको अत्यन्त प्रिय, सुन्दर, हवनका लागि योग्य सोमको रस मरुत्‌हरू निकाल्छन्।

**समेनमह्रुता इमा गिरो अर्षन्ति सस्रुतः। धेनूर्वाश्रो अवीवशत् ॥६॥**
गाईले आफ्ना बाछासित आउन मन गरेभैं हाम्रो स्तुति सोमदेवकहाँ जाने रहर गर्दछ।

[सूक्त - ३५]

**ऋषि** – प्रभूवसु आङ्गिरस। **देवता** – पवमान सोम। **छन्द** – गायत्री।

**आ नः पवस्व धारया पवमान रयिं पृथुम्। यया ज्योतिर्विदासि नः ॥१॥**
हे सोमदेव ! हामीलाई तेज प्रदान गर्ने धाराले नै आफ्नो रससँगै पर्याप्त धन प्रदान गर।

**इन्दो समुद्रमीङ्खय पवस्व विश्वमेजय। रायो धर्ता न ओजसा ॥२॥**
हे सोमदेव ! आफ्ना धारामा मिसिनका लागि जललाई प्रेरित गर। शत्रुलाई भयभीत गराउने हे सोमदेव। आफ्ना शक्तिले हामीलाई धनवान् बनाउने रस प्रदान गर।

**त्वया वीरेण वीरवोऽभि ष्याम पृतन्यतः। क्षरा णो अभि वार्यम् ॥३॥**
हे शौर्यवान् सोमदेव ! तिमीजस्ता वीर सहयोगीसँग बसेर नै हामी शत्रुसेनाको प्रतिकार गर्दछौं। हामीलाई तिमी वीरता प्रदान गर्ने खालको धन प्रदान गर।

**प्र वाजमिन्दुरिष्यति सिषासन्वाजसा ऋषिः। व्रता विदान आयुधा ॥४॥**
अन्नयुक्त द्रष्टा सोमले हामीलाई अन्न प्रदान गर्दछ। आफूसितै आयुध राख्ने सोम सबैको नियम जान्दछन्।

**तं गीर्भिर्वाचमीङ्खयं पुनानं वासयामसि। सोमं जनस्य गोपतिम् ॥५॥**
पवित्र गराउने, स्तुतिका लागि प्रेरणा दिने, प्रजापालक र गाईको रक्षा गर्ने सोमलाई हामी सुरक्षित राख्दछौं र उसै सोमको हामी स्तोत्रले स्तुति गर्दछौं।

**विश्वो यस्य व्रते जनो दाधार धर्मणस्पतेः। पुनानस्य प्रभूवसोः ॥६॥**
सोमयज्ञमा सबै याज्ञिकको मन भुलिएको छ। शोधित सोम धर्मको पालन गर्ने र पर्याप्त धनले युक्त हुन्छ।

[सूक्त - ३६]

**ऋषि** – प्रभूवसु आङ्गिरस। **देवता** – पवमान सोम। **छन्द** – गायत्री।

**असर्जि रथ्यो यथा पवित्रे चम्वोः सुतः। कार्ष्मन्वाजी न्यक्रमीत् ॥१॥**
ढुङ्गामा हिँडेका रथका अश्वभैं सावधानीपूर्वक पेलेको सोमरस पात्रमा भर्ने गरिन्छ। बलशाली सोम पनि देवताभैं आफूतर्फ आकर्षित गर्नका लागि समर्थ छ।

**स वह्निः सोम जागृविः पवस्व देववीरति। अभि कोशं मधुश्चुतम् ॥२॥**
हे सामर्थ्यवान्, उदीयमान सूर्यजस्तै र कान्तिमान् सोमदेव ! मधुरताले युक्त भएर तिमी पात्रमा शोधित भइदेऊ।

**स नो ज्योतींषि पूर्व्य पवमान वि रोचय। क्रत्वे दक्षाय नो हिनु ॥३॥**
हे सनातन सोमदेव ! हाम्रो तेज विस्तार गर र यज्ञको कार्य गर्नका लागि बल प्राप्त गर्ने प्रेरणा देऊ।

**शुम्भमान ऋतायुभिर्मृज्यमानो गभस्त्योः। पवते वारे अव्यये ॥४॥**
याज्ञिकहरूले शोधन गरेको सोम भेडाको ऊनजस्ता चाल्नीले छानेपछि सुशोभित हुन्छ।

**स विश्वा दाशुषे वसु सोमो दिव्यानि पार्थिवा। पवतामान्तरिक्ष्या ॥५॥**
द्युलोक, पृथ्वी र अन्तरिक्षको सम्पूर्ण वैभव याज्ञिकलाई सोमले प्रदान गरोस्।

**आ दिवस्पृष्ठमश्वयुर्गव्ययुः सोम रोहसि। वीरयुः शवसस्पते ॥६॥**
हे अन्नदाता सोम ! तिमी अश्व, गाई र वीर पुत्रको इच्छा गर्दै द्युलोकका माथिल्लो भागमा स्थित हुन्छौ।

[सूक्त - ३७]

**ऋषि** – रहूगण आङ्गिरस। **देवता** – पवमान सोम। **छन्द** – गायत्री।

**स सुतः पीतये वृषा सोमः पवित्रे अर्षति। विघ्नन्रक्षांसि देवयुः ॥१॥**
दिव्य गुणयुक्त, इन्द्र आदि देवताका लागि तयार गरिएको र खोजेको पूरा गराउने सोम विकृति नाश गराउँदै चाल्ने यन्त्रबाट भर्न थाल्छ।

स पवित्रे विचक्षणो हरिरर्षति धर्णसिः। अभि योनिं कनिक्रदत् ॥२॥
सबैको संरक्षक, सबैको धारक, दुष्टसंहारक, हरियो आभाले सम्पन्न सोम छान्नेबाट पवित्र भएर शब्दसँगै कलशमा पुग्दछ।

स वाजी रोचना दिवः पवमानो वि धावति। रक्षोहा वारमव्ययम् ॥३॥
द्युलोकमा प्रकाशमान, सामर्थ्यवान्, दुष्टसंहारक, शोधित, दिव्य सोम अविरल रूपले प्रवाहित हुन्छ।

स त्रितस्याधि सानवि पवमानो अरोचयत्। जामिभिः सूर्यं सह ॥४॥
त्रित यज्ञमा संस्कारित सोमले आफ्ना महान् तेजले सूर्यदेवलाई प्रकाशित गर्दछ।

स वृत्रहा वृषा सुतो वरिवोविददाभ्यः। सोमो वाजमिवासरत् ॥५॥
शत्रुको नाश गर्ने बलवर्द्धक, पेलेर निकालिएको, धन प्रदान गर्ने सोम अश्वजस्तै वेगले कलशमा प्रवेश गर्दछ।

स देवः कविनेषितोऽभि द्रोणानि धावति। इन्दुरिन्द्राय मंहना ॥६॥
द्युलोकमा प्रकाशमान् सोम याजकबाट प्रभावित भएपछि इन्द्र आदि देवताको महत्त्व बढाउनका लागि वेगपूर्वक कलशमा प्रवेश गर्दछ।

[सूक्त - ३८]

**ऋषि** - रहूगण आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

एष उ स्य वृषा रथोऽव्यो वारेभिरर्षति। गच्छन् वाजं सहस्रिणम् ॥१॥
रथजस्तै वेगवान्, अभीष्ट प्रदायक यो सोम चाल्नीले कलशमा छानिन्छ।

एतं त्रितस्य योषणो हरिं हिन्वन्त्यद्रिभिः। इन्दुमिन्द्राय पीतये ॥२॥
इन्द्रदेवले प्रयोग गर्ने यो हरियो आभासम्पन्न सोम तीन किसिमले पेल्ने गरन्छि।

एतं त्यं हरितो दश मर्मृज्यन्ते अपस्युवः। याभिर्मदाय शुम्भते ॥३॥
इन्द्रदेवलाई प्रसन्न गर्ने यज्ञमा प्रयोग गर्नका निम्ति दस औँलाले सोम शोधित गर्दछन्।

एष स्य मानुषीष्वा श्येनो न विक्षु सीदति। गच्छञ्जारो न योषितम् ॥४॥
प्रेमीप्रेमिका आपसमा भेट गर्नका लागि कुदेझैं वा बाज पक्षी सिकारमा कुदेझैं यो सोम मानवका बीचमा शीघ्रतापूर्वक पुगेर प्रतिष्ठित हुन्छ।

एष स्य मद्यो रसोऽव चष्टे दिवः शिशुः। य इन्दुर्वारमाविशत् ॥५॥
द्युलोकमा उत्पन्न भएको आनन्दवर्द्धक सोम सबैलाई हेर्दै चाल्नीले शुद्ध हुन्छ।

एष स्य पीतये सुतो हरिरर्षति धर्णसिः। क्रन्दन्योनिमभि प्रियम् ॥६॥
सबैलाई धारण गर्ने अविनाशी सोम देवताले पिउनका लागि तयार भएको छ। यो ध्वनि गर्दै आफ्नो प्रिय निवासस्थान कलशमा प्रवेश गर्दछ।

[सूक्त - ३९]

**ऋषि** - बृहन्मति आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

आशुरर्ष बृहन्मते परि प्रियेण धाम्ना। यत्र देवा इति ब्रवन् ॥१॥
हे मूर्तिमान् सोमदेव ! तिमी आफ्ना प्रिय रसधारासहित देवताको निवासमा जाने विचारले चाँडै उपस्थित होऊ।

परिष्कृण्वन्ननिष्कृतं जनाय यातयन्निषः। वृष्टिं दिवः परि स्रव ॥२॥
हे सोमदेव ! संस्काररहित क्षेत्रलाई संस्कारवान् बनाउँदै, मानिसका लागि अन्न आदि उत्पन्न गर्नका लागि, आकाशबाट वर्षा गराऊ।

सुत एति पवित्र आ त्विषिं दधान ओजसा। विचक्षाणो विरोचयन् ॥३॥
सबैको निरीक्षक, सबैको प्रकाशक, दिव्य सोम अन्तरिक्षबाट प्राकृतिक चाल्नीले छानिँदै तीव्र गतिले अवतरित हुन्छ।

अयं स यो दिवस्परि रघुयामा पवित्र आ। सिन्धोरूर्मा व्यक्षरत् ॥४॥
आकाशमा तीव्र गतिले विचरण गर्ने, पवित्र गरिएको सोमरस सागरको लहरझैं लाग्छ।

**आविवासन् परावतो अथो अर्वावतः सुतः । इन्द्राय सिच्यते मधु ॥५॥**
सफा सोमरस तयारी गरेपछि टाढा वा नजिकबाट इन्द्रदेवलाई समर्पित गरिन्छ।

**समीचीना अनूषत हरिं हिन्वन्त्यद्रिभिः । योनावृतस्य सीदत ॥६॥**
यज्ञस्थलमा प्रतिष्ठित, ढुङ्गले पेलेर निकालेको, ताजा हरियो रङ्ग भएको सोमरस सफा गर्दाखेरि एका ठाउँमा जम्मा भएर साधकहरू स्तुति गर्दछन्।

[सूक्त - ४०]

**ऋषि** - बृहन्मति आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**पुनानो अक्रमीदभि विश्वा मृधो विचर्षणिः । शुम्भन्ति विप्रं धीतिभिः ॥१॥**
पवित्र भइसकेपछि बुद्धिवर्द्धक एवं ज्ञानवर्द्धक सोमरसले सबै शत्रुलाई शमन गर्दछ। ज्ञानीहरू यस सोमलाई दिव्य स्तोत्रले स्तुति गर्दछन्।

**आ योनिमरुणो रुहद्गमदिन्द्रं वृषा सुतः । ध्रुवे सदसि सीदति ॥२॥**
विधिवत् तयार गरेको अरुण आभायुक्त सोम कलशमा स्थिर हुन्छ। उत्तम स्थानमा प्रतिष्ठित भएर इन्द्रदेवका नजिकमा जान्छ।

**नू नो रयिं महामिन्दोऽस्मभ्यं सोम विश्वतः । आ पवस्व सहस्रिणम् ॥३॥**
हे तृप्तिदायक सोमदेव ! हामीलाई चाँडै हजारौं महान् वैभव सबै तिरबाट प्रदान गर।

**विश्वा सोम पवमान द्युम्नानीन्दवा भर। विदाः सहस्रिणीरिषः ॥४॥**
हे शोधित तेजस्वी सोमदेव ! हामीलाई हरेक किसिमका धनले भरिपूर्ण गर र हजारौं किसिमका अन्न प्रदान गर।

**स नः पुनान आ भर रयिं स्तोत्रे सुवीर्यम्। जरितुर्वर्धया गिरः ॥५॥**
हे सोमदेव ! शोधित हुँदै, पराक्रमी बनाउने असल धन हामी सबै स्तोतालाई प्रदान गर र ती स्तोताको स्तुति विस्तार गर।

**पुनान इन्दवा भर सोम द्विबर्हसं रयिम्। वृषन्निन्दो न उक्थ्यम् ॥६॥**
हे तेजस्वी सोमदेव ! तेजस्वी हुँदै द्युलोक र पृथ्वीको धन हामीलाई प्रदान गर। हे धन प्रदाता सोमदेव ! हामीलाई प्रशंसनीय धन प्रदान गर।

[सूक्त - ४१]

**ऋषि** - मेध्यातिथि काण्व। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**प्र ये गावो न भूर्णयस्त्वेषा अयासो अक्रमुः । घ्नन्तः कृष्णामप त्वचम् ॥१॥**
गाईरूपी किरणले कालो आवरण हटाउँदै सोम तीव्र गतिका साथ अघि बढेको छ।

**सुवितस्य मनामहेऽति सेतुं दुराव्यम्। साह्वांसो दस्युमव्रतम् ॥२॥**
हे असह्य बन्धन हटाएर सुख प्रदान गर्ने सोमदेव ! सत्कर्म विमुख भई दुष्कर्ममा लागेका शत्रुको थान्को लगाउन हामी तिम्रो वन्दना गर्दछौं।

**शृण्वे वृष्टेरिव स्वनः पवमानस्य शुष्मिणः । चरन्ति विद्युतो दिवि ॥३॥**
पवित्र गर्दाखेरिको सोमको ध्वनि, वर्षा हुँदाखेरिको जलको ध्वनिजस्तै रमाइलो छ। त्यस्तो तेजस्वी सोमको किरण आकाशमा सर्वत्र फैलन्छ।

**आ पवस्व महीमिषं गोमदिन्दो हिरण्यवत्। अश्वावद्वाजवत् सुतः ॥४॥**
असल भाँडामा रहेका हे सोमदेव ! हामीलाई अन्नको भण्डार एवं पुत्र, पौत्र, गाई, अश्व र स्वर्ण आदि अपार वैभव देऊ।

**स पवस्व विचर्षण आ मही रोदसी पृण। उषाः सूर्यो न रश्मिभिः ॥५॥**
उषा कालभन्दा पछि आफ्ना सुनौला रश्मिले संसार आलोकित गर्ने सूर्यदेवजस्ता हे विश्वद्रष्टा सोमदेव ! आफ्ना तृप्तिदायक पवित्र रसले धर्ती र आकाश भरिदेऊ।

**परि णः शर्मयन्त्या धारया सोम विश्वतः । सरा रसेव विष्टपम् ॥६॥**
हे सोमदेव ! जलले घेरिएको पृथ्वीजस्तै तिमी आफ्नो सुखद रसधाराले हामीलाई चारै तिरबाट घेर।

[सूक्त - ४२]

ऋषि - मेध्यातिथि काण्व। देवता - पवमान सोम। छन्द - गायत्री।

**जनयन्रोचना दिवो जनयन्नप्सु सूर्यम्। वसानो गा अपो हरिः ॥१॥**

हरियो आभायुक्त सोम द्युलोकमा नक्षत्र र अन्तरिक्षमा सूर्यदेवको निर्माण गरेर गाई तथा जललाई प्रभावित गर्दछ।

**एष प्रत्नेन मन्मना देवो देवेभ्यस्परि। धारया पवते सुतः ॥२॥**

सनातन स्तुतिका सहायताले देदीप्यमान सोमरस देवताका लागि धाराका रूपमा प्रवाहित हुन्छ।

**वावृधानाय तूर्वये पवन्ते वाजसातये। सोमाः सहस्रपाजसः ॥३॥**

सोमरस अनेकौं बल वृद्धि गर्नका लागि र अन्न आदि प्राप्त गर्ने उद्देश्यले निकालिन्छ।

**दुहानः प्रत्नमित्पयः पवित्रे परि षिच्यते। क्रन्दन्देवाँ अजीजनत् ॥४॥**

भाँडामा पेलेको सोमरस चाल्नीले छानिन्छ। शब्द गर्ने यो सोमरस देवताहरूलाई यज्ञमा बोलाएझैं देखिन्छ।

**अभि विश्वानि वार्याभि देवाँ ऋतावृधः। सोमः पुनानो अर्षति ॥५॥**

शोधित सोमरसले सत्यको आचरण गर्ने देवतालाई नजिक ल्याएर सबै किसिमका धन विभिन्न तरिकाले प्रदान गर्दछ।

**गोमन्नः सोम वीरवदश्वावद्वाजवत्सुतः। पवस्व बृहतीरिषः ॥६॥**

हे सोमदेव ! तिमी गाई, वीर पुत्रहरू, अश्व र बलले युक्त अन्न हामीलाई प्रदान गर।

[सूक्त - ४३]

ऋषि - मेध्यातिथि काण्व। देवता - पवमान सोम। छन्द - गायत्री।

**यो अत्य इव मृज्यते गोभिर्मदाय हर्यतः। तं गीर्भिर्वासयामसि ॥१॥**

अश्वजस्तो गतिशील सोमलाई गाईको दुधमा मिसेर शोधन गरिन्छ। आनन्ददायी हुनाले त्यो प्रिय छ। स्तुति गर्दै उसै सोमलाई यज्ञस्थलमा स्थापना गर्दछन्।

**तं नो विश्वा अवस्युवो गिरः शुम्भन्ति पूर्वथा। इन्दुमिन्द्राय पीतये ॥२॥**

सनातन स्तुतिजस्तै हरेक किसिमले रक्षा गर्ने स्तुतिले सोमलाई सुशोभित गराउँदै इन्द्रदेवका लागि तयार गर्दछन्।

**पुनानो याति हर्यतः सोमो गीर्भिः परिष्कृतः। विप्रस्य मेध्यातिथेः ॥३॥**

स्तुतिले संस्कारित, शोधित सोमरस ज्ञानवान् मेधातिथिका यज्ञमा पुग्दछ।

**पवमान विदा रयिमस्मभ्यं सोम सुश्रियम्। इन्दो सहस्रवर्चसम् ॥४॥**

हे पवित्र तेजस्वी सोमदेव ! तिमी हजारौं किसिमका उत्तम धन हामीलाई देऊ।

**इन्दुरत्यो न वाजसृत्कनिक्रन्ति पवित्र आ। यदक्षारति देवयुः ॥५॥**

युद्धमा जाने अश्वझैं यो सोम देवताका नजिक पुग्ने रहरले चाल्नीमा शब्द गर्न थाल्छ।

**पवस्व वाजसातये विप्रस्य गृणतो वृधे। सोम रास्व सुवीर्यम् ॥६॥**

हे सोमदेव ! स्तोता विप्रको उन्नति र उत्तम बलयुक्त अन्नका लागि प्रवाहित होऊ।

[सूक्त - ४४]

ऋषि - अयास्य आङ्गिरस। देवता - पवमान सोम। छन्द - गायत्री।

**प्र ण इन्दो महे तन ऊर्मिं न बिभ्रदर्षसि। अभि देवाँ अयास्यः ॥१॥**

हे सोमदेव ! प्रचुर सम्पदा प्राप्तिका लागि तिमी कलशमा छानिन्छौ। तिम्रो तेज धारण गर्ने अयास्य ऋषि देवतातिर जान लागेका छन्।

**मती जुष्टो धिया हितः सोमो हिन्वे परावति। विप्रस्य धारया कविः ॥२॥**

ज्ञानीहरूका असल बुद्धिले सेवित सोमरस सत्कर्मरूपी यज्ञमा धेरै टाढासम्म पुग्दछ।

**अयं देवेषु जागृविः सुत एति पवित्र आ। सोमो याति विचर्षणिः ॥३॥**

जागरणशील, दिव्यद्रष्टा सोमरस चाल्नीबाट छानिएपछि देवतातिर जान्छ।

**स नः पवस्व वाजयुश्चक्राणश्चारुमध्वरम्। बर्हिष्माँ आ विवासति ॥४॥**

हे सोमदेव ! हिंसारहित यज्ञ उत्तम तरिकाले पूर्ण गराउँदै याज्ञिक र हामी सबैका लागि अन्न प्रदान गर्ने रस तिमी प्रदान गर।

स नो भगाय वायवे विप्रवीरः सदावृधः । सोमो देवेष्वा यमत् ॥५॥
ज्ञानीहरूबाट प्रेरित सोमरस सधैँ संवर्द्धित हुँदै वायुजस्तै देवत्व प्रदान गर्ने ऐश्वर्य हामीलाई प्रदान गरोस् ।

स नो अद्य वसुत्तये क्रतुविद् गातुवित्तमः । वाजं जेषि श्रवो बृहत् ॥६॥
हे सोमदेव ! तिमी पुण्य कर्मका मार्गदर्शक र सत्कर्म गर्ने हौ । त्यसैले तिमी धन र उत्तम अन्नमाथि विजय प्राप्त गर्दछौ ।

## [सूक्त - ४५]

**ऋषि** - अयास्य आङ्गिरस । **देवता** - पवमान सोम । **छन्द** - गायत्री ।

स पवस्व मदाय कं नृचक्षा देववीतये । इन्दविन्द्राय पीतये ॥१॥
हे सोमदेव ! तिमी मनुष्यका द्रष्टा हौ । देवताहरू र इन्द्रदेवले आनन्द वृद्धिका लागि पान गर्ने आफ्नो रस सुखपूर्वक उत्पादन गर ।

स नो अर्षाभि दूत्यं१ त्वमिन्द्राय तोशसे । देवान्त्सखिभ्य आ वरम् ॥२॥
हे सोमदेव ! तिमी ज्ञानको सन्देशवाहक बनेर इन्द्रदेवको सन्तुष्टिका लागि देवगण र अन्य मित्रहरू प्राप्त गर्नका लागि रस प्रदान गर ।

उत त्वामरुणं वयं गोभिरञ्ज्मो मदाय कम् । वि नो राये दुरो वृधि ॥३॥
अरुण वर्णको आभा हुने सोमलाई आनन्द वृद्धि र सुख प्राप्तिका लागि गाईको दुधमा मिसाइन्छ । हे सोमदेव ! हाम्रो धन प्राप्तिको मार्ग तिमी बढाइदेऊ ।

अत्यू पवित्रमक्रमीद्वाजी धुरं न यामनि । इन्दुर्देवेषु पत्यते ॥४॥
अश्वले ठिक बाटोमा रथ हिँडाएझैँ शोधन यन्त्र पार गरेको सोम देवताकहाँ पुग्दछ ।

समी सखायो अस्वरन्वने क्रीळन्तमत्यविम् । इन्दुं नावा अनूषत ॥५॥
चाल्नीमा रमाउने प्रशोधित सोमरसलाई मित्रभावले याजकहरू यज्ञमा स्तुति गर्दछन् ।

तया पवस्व धारया यया पीतो विचक्षसे । इन्दो स्तोत्रे सुवीर्यम् ॥६॥
हे सोमदेव ! जुन धाराले पान गर्दाखेरि तिमी स्तोतालाई उचित किसिमको बल प्रदान गर्दछौ, उसै धाराले पात्रमा भरिँदै पवित्र होऊ ।

## [सूक्त - ४६]

**ऋषि** - अयास्य आङ्गिरस । **देवता** - पवमान सोम । **छन्द** - गायत्री ।

असृग्रन्देववीतयेऽत्यासः कृत्व्या इव । क्षरन्तः पर्वतावृधः ॥१॥
पर्वतमा उब्जिएर हुर्केबढेको सोमरस देवताकहाँ पुग्नका लागि वेगवान् अश्वझैँ भएर पात्रमा पस्न पुग्दछ ।

परिष्कृतास इन्दवो योषेव पित्र्यावती । वायुं सोमा असृक्षत ॥२॥
बाबुका घरबाट छोरी सिंगारिएर लोग्नेका घरमा जान लागेको झैँ गरी सोम वायुदेवका नजिकमा पुग्दछ ।

एते सोमास इन्दवः प्रयस्वन्तश्चमू सुताः । इन्द्रं वर्धन्ति कर्मभिः ॥३॥
पात्रमा निकालेर राखेको यस्तो तेजस्वी सोमरसले अन्नसँग मिसिएर आफ्ना यज्ञीय कार्यले इन्द्रदेवको बल बढाउँछ ।

आ धावता सुहस्त्यः शुक्रा गृभ्णीत मन्थिना । गोभिः श्रीणीत मत्सरम् ॥४॥
हे सिपालु याज्ञिक हो ! हाम्रा नजिकै आओ र मदानीले मथेर बलशाली सोमरसलाई गाईका दुधमा मिसाओ ।

स पवस्व धनञ्जय प्रयन्ता राधसो महः । अस्मभ्यं सोम गातुवित् ॥५॥
हे शत्रुको धन जित्ने सोम ! हामीलाई उत्तम धन प्राप्त गर्ने असल मार्ग देखाइदेऊ ।

एतं मृजन्ति मर्ज्यं पवमानं दश क्षिपः । इन्द्राय मत्सरं मदम् ॥६॥
स्तुत्य, पवित्र, सुखदायक सोम इन्द्रलाई दिएर खुसी पार्न दसै औँला शुद्ध गर्दै छन् ।

[सूक्त - ४७]

ऋषि - कवि भार्गव। देवता - पवमान सोम। छन्द - गायत्री।

**अया सोमः सुकृत्यया महश्चिदभ्यवर्धत। मन्दान उद्वृषायते ॥१॥**

हे सोम ! असल कार्यमा लागेर महान् बनेपछि आनन्द प्रदान गर्दै शक्ति बढाउँछौ।

**कृतानीदस्य कर्त्वा चेतन्ते दस्युतर्हणा। ऋणा च धृष्णुश्चयते ॥२॥**

सोमले शत्रुको नाश गर्दछ र धैर्यपूर्वक ऋणबाट मुक्त गराउँछ।

**आत्सोम इन्द्रियो रसो वज्रः सहस्रसा भुवत्। उक्थं यदस्य जायते ॥३॥**

इन्द्रदेवको स्तोत्र उच्चारण गर्दाखेरि उनका प्रिय सोमरसले हजारौं किसिमका पौष्टिक अन्न प्रदान गर्दछ।

**स्वयं कविर्विधर्तरि विप्राय रत्नमिच्छति। यदी मर्मृज्यते धियः ॥४॥**

औंलाले केलाउँदै गर्दा यस सोमले कविजस्ता ज्ञानीलाई धन प्रदान गर्ने विचार गर्छ।

**सिषासतू रयीणां वाजेष्वर्वतामिव। भरेषु जिग्युषामसि ॥५॥**

हे सोमदेव ! लडाइँमा जाँदा अश्वलाई घाँस दिइएझैं युद्धभूमिमा विजयको रहर गर्नेलाई तिमी धन प्रदान गर्दछौ।

[सूक्त - ४८]

ऋषि - कवि भार्गव। देवता - पवमान सोम। छन्द - गायत्री।

**तं त्वा नृम्णानि बिभ्रतं सधस्थेषु महो दिवः। चारुं सुकृत्ययेमहे ॥१॥**

देवलोकमा व्याप्त, विभिन्न किसिमका ऐश्वर्यले युक्त, सुन्दर हे सोमदेव ! उत्तम कर्मद्वारा तिमीलाई प्राप्त गर्ने हाम्रो रहर छ।

**संवृक्तधृष्णुमुक्थ्यं महामहिव्रतं मदम्। शतं पुरो रुरुक्षणिम् ॥२॥**

हे असुरविजयी सोमदेव ! उत्तम कर्म गर्ने आनन्ददायी र शत्रुका सयौं सहर ध्वस्त गर्ने तिमी नै हौ। तिमीसित हामी ऐश्वर्य माग्छौं।

**अतस्त्वा रयिमभि राजानं सुक्रतो दिवः। सुपर्णो अव्यथिर्भरत् ॥३॥**

उत्तम कर्मको थालनी गर्ने, ऐश्वर्यवान्, तेजस्वी हे सोमदेव ! कष्ट र पीडालाई महत्त्व नदिईकन गरुडले तिमीलाई द्युलोकबाट पृथ्वीमा ल्याऊन्।

**विश्वस्मा इत्स्वर्दृशे साधारणं रजस्तुरम्। गोपामृतस्य विर्भरत् ॥४॥**

यज्ञको रक्षा गर्ने, जलका प्रेरक, स्वयं प्रकाशयुक्त, देवशक्ति सहजतापूर्वक प्राप्त गर्ने दिव्य सोम आकाशमा व्याप्त छ।

**अधा हिन्वान इन्द्रियं ज्यायो महित्वमानशे। अभिष्टिकृद्विचर्षणिः ॥५॥**

ज्ञानसम्पन्न एवं खोजेको फल दिने सोम शोधित भएर आफ्नो क्षमता अझै धेरै बनाउँदै असल बन्न पुग्दछ।

[सूक्त - ४९]

ऋषि - कवि भार्गव। देवता - पवमान सोम। छन्द - गायत्री।

**पवस्व वृष्टिमा सु नोऽपामूर्मिं दिवस्परि। अयक्ष्मा बृहतीरिषः ॥१॥**

हे दिव्य सोमदेव ! द्युलोकबाट उचित वर्षा गराएर जललाई तरङ्गित गराऊ र त्यसका साथै रोगनाशक अन्न हामीलाई देऊ।

**तया पवस्व धारया यया गाव इहागमन्। जन्यास उप नो गृहम् ॥२॥**

हे सोमदेव ! हामीलाई अन्य गाईहरू प्राप्त हुने आफ्नो धारा प्रकट गर।

**घृतं पवस्व धारया यज्ञेषु देववीतमः। अस्मभ्यं वृष्टिमा पव ॥३॥**

हे सोमदेव ! यज्ञमा देवताले रोजेको तिम्रो धारारूपी जलको वर्षा गराऊ।

**स न ऊर्जे व्य१व्ययं पवित्रं धाव धारया। देवासः शृणवन्हि कम् ॥४॥**

हे सोमदेव ! हामीलाई अन्न प्रदान गर्नका लागि चाल्नीबाट धाराका रूपमा छानिँदै कलशमा प्रवेश होऊ। देवताहरू तिम्रो शब्द सुनेर खुसी होऊन्।

**पवमानो असिष्यदद्रक्षांस्यपजङ्घनत्। प्रत्नवद्रोचयन् रुचः ॥५॥**

शत्रुको संहार गर्ने, तेजले देदीप्यमान, पवित्र सोमरस कलशमा झर्दछ।

[सूक्त - ५०]

**ऋषि** - उचथ्य आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**उत्ते शुष्मास ईरते सिन्धोरूर्मेरिव स्वनः। वाणस्य चोदया पविम् ॥१॥**

हे सोमदेव ! तिमी प्रवाहित हुँदा समुद्रको तरङ्गजस्तै ध्वनि हुन्छ। तिमी वाणीले उत्पन्न शब्दको जस्तै ध्वनि गर।

**प्रसवे त उदीरते तिस्रो वाचो मखस्युवः। यदव्य एषि सानवि ॥२॥**

हे सोमदेव ! तिमी प्रादुर्भाव हुँदा याकजहरू ऋक्, यजु र सामका मन्त्रको गाउँछन्। अनि तिमी उच्च आसनमा विराजमान भएर संस्कारित हुनका लागि तत्पर हुन्छौ।

**अव्यो वारे परि प्रियं हरिं हिन्वन्त्यद्रिभिः। पवमानं मधुश्चुतम् ॥३॥**

ऋत्विक्हरू ढुङ्गाले कुटेर हरियो आभासम्पन्न सुन्दर, मिठो सोमरस चाल्नीले छान्छन्।

**आ पवस्व मदिन्तम पवित्रं धारया कवे। अर्कस्य योनिमासदम् ॥४॥**

हे परम आनन्ददायी सोमरस ! इन्द्रदेवलाई तृप्त गराउनका लागि तिमी शोधनयन्त्रबाट सफा धाराका रूपमा प्रवाहित होऊ।

**स पवस्व मदिन्तम गोभिरञ्जानो अक्तुभिः। इन्दविन्द्राय पीतये ॥५॥**

हे आनन्ददाता सोम ! तिमी गाईको पुष्टिकारक दुध आदिका मिश्रणमा छानिएर इन्द्रदेवले पान गर्नका लागि योग्य होऊ।

[सूक्त - ५१]

**ऋषि** - उचथ्य आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**अध्वर्यो अद्रिभिः सुतं सोमं पवित्र आ सृज। पुनीहीन्द्राय पातवे ॥१॥**

हे अध्वर्यु हो ! इन्द्रले पिउने गरी ढुङ्गाले पेलेको सोम पवित्र गरेर भाँडानजिकै ल्याओ।

**दिवः पीयूषमुत्तमं सोममिन्द्राय वज्रिणे। सुनोता मधुमत्तमम् ॥२॥**

हे याज्ञिक हो ! द्युलोकको अमृतजस्तै अत्यन्त मिठो सोमरस वज्रधारी इन्द्रदेवलाई प्रदान गर्नका लागि तयार गर।

**तव त्य इन्दो अन्धसो देवा मधोर्व्यश्नते। पवमानस्य मरुतः ॥३॥**

हे सोमदेव ! तिम्रो आनन्दवर्द्धक मिठो अन्नरूपी रस देवता र मरुत्‌ले सेवन गर्दछन्।

**त्वं हि सोम वर्धयन्त्सुतो मदाय भूर्णये। वृषन्त्स्तोतारमूतये ॥४॥**

हे पेलेर तयार गरिएका सोमदेव ! तिमी देवतालाई खुसी पार्न, उनको रहर पूरा गर्न र संरक्षण प्रदान गर्न सहायक होऊ।

**अभ्यर्ष विचक्षण पवित्रं धारया सुतः। अभि वाजमुत श्रवः ॥५॥**

हे सर्वद्रष्टा सोमदेव ! चाल्नीबाट धाराका रूपमा निचोरिएको तिम्रा रसले हामीलाई अन्न र कीर्ति प्रदान गरोस्।

[सूक्त - ५२]

**ऋषि** - उचथ्य आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

**परि द्युक्षः सनद्रयिर्भरद्वाजं नो अन्धसा। सुवानो अर्ष पवित्र आ ॥१॥**

धन प्रदान गर्ने तेजस्वी सोमले हामीलाई बल एवं अन्नले पूरा गराओस्। हे सोमदेव ! तिमी शोधक यन्त्रले शोधित हुँदै आऊ।

**तव प्रत्नेभिरध्वभिरव्यो वारे परि प्रियः। सहस्रधारो यात्तना ॥२॥**

हे सोम ! हजारौँ धाराबाट गमन गर्ने तिम्रो प्रिय रस अविनाशी चाल्नीबाट तलतिर प्रवाहित हुन्छ।

**चरुर्न यस्तमीङ्खयेन्दो न दानमीङ्खय। वधैर्वधस्नवीङ्खय ॥३॥**

हे सोमदेव ढुङ्गाले कुटेका बेला रसलाई बाहिर निस्कन तिमी प्रेरित गर। हे सोमदेव ! चरुजस्तै खाद्यहरू हामीलाई प्रदान गर।

**नि शुष्ममिन्दवेषां पुरुहूत जनानाम्। यो अस्माँ आदिदेशति ॥४॥**

हे स्तुति गर्न योग्य सोमदेव ! तिम्रो बल बढाउने प्रेरणा हाम्रा लागि हितकारी होस्।

**शतं न इन्द ऊतिभिः सहस्रं वा शुचीनाम्। पवस्व मंहयद्रयिः ॥५॥**

हे सोमदेव ! हजारौँ किसिमले शुद्ध भएर संरक्षणले युक्त धन प्रदान गर्ने रस निकाल।

[सूक्त - ५३]

ऋषि - अवत्सार काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**उत्ते शुष्मासो अस्थू रक्षो भिन्दन्तो अद्रिवः। नुदस्व याः परिस्पृधः ॥१॥**

ढुङ्गाले कुटिएका हे शुद्ध सोमदेव ! तिम्रा उठिरहेका तरङ्गबाट राक्षसको विनाश हुन्छ। हामीसित लडाइँ गर्ने शत्रुलाई तिमी पर भगाइदेऊ।

**अया निजघ्निरोजसा रथसङ्गे धने हिते। स्तवा अबिभ्युषा हृदा ॥२॥**

हे सोमदेव ! तिमी आफ्ना सामर्थ्यले शत्रु विनाश गर्न सक्षम छौ। युद्धमा हामी निर्भय मनले रथमा बसेर धन प्राप्तिका लागि तिम्रो स्तुति गर्दछौँ।

**अस्य व्रतानि नाधृषे पवमानस्य दूढ्या। रुज यस्त्वा पृतन्यति ॥३॥**

संस्कारित सोमका कर्मले दुष्ट राक्षसको प्रगति हुन सक्दैन। हे सोमदेव ! तिमीप्रति आक्रमण गर्न खोज्ने शत्रुको विनाश गर।

**तं हिन्वन्ति मदच्युतं हरिं नदीषु वाजिनम्। इन्दुमिन्द्राय मत्सरम् ॥४॥**

आनन्दको रस बगाउने, बल र उत्साह बढाउने हरियो आभासम्पन्न सोमले नदीका माध्यमबाट इन्द्रदेवलाई प्रेरित गर्दछ।

[सूक्त - ५४]

ऋषि - अवत्सार काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**अस्य प्रत्नामनु द्युतं शुक्रं दुदुह्रे अह्रयः। पयः सहस्रसामृषिम् ॥१॥**

याजकहरू सनातन स्वरूप भएको शुद्ध सोम निकाल्दछन्। त्यस द्रष्टा सोमरसले हजारौँ किसिमका धन प्रदान गर्छ।

**अयं सूर्य इवोपदृगयं सरांसि धावति। सप्त प्रवत आ दिवम् ॥२॥**

देवलोकसम्म सात धाराका रूपमा प्रवाहित सूर्यदेवजस्तै सबै लोकका द्रष्टा सोमरस जलपात्रमा शोधित गरिन्छ।

**अयं विश्वानि तिष्ठति पुनानो भुवनोपरि। सोमो देवो न सूर्यः ॥३॥**

पवित्र सोमरस सूर्यदेवजत्तिकै सबै लोकमा प्रकाशित हुन्छ।

**परि णो देववीतये वाजाँ अर्षसि गोमतः। पुनान इन्द्रविन्द्रयुः ॥४॥**

इन्द्रदेवका नजिकै पुग्ने रहर भएका, शोधित हे सोमदेव ! तिमी देवताका निमित्त गाई र अनेकौँ खालका अन्न प्रदान गर्दछौ।

[सूक्त - ५५]

ऋषि - अवत्सार काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**यवंयवं नो अन्धसा पुष्टम्पुष्टं परि स्रव। सोम विश्वा च सौभगा ॥१॥**

हे सोमदेव ! आफ्नो दिव्य पोषक रस अन्न एवं वनस्पतिसँगै हामीलाई उपलब्ध गराऊ र हामीलाई सम्पूर्ण वैभव प्रदान गर।

**इन्दो यथा तव स्तवो यथा ते जातमन्धसः। नि बर्हिषि प्रिये सदः ॥२॥**

देवताका प्रिय आहार हे सोमदेव ! याजकहरू जुन भावनाले तिम्रो स्तुति गर्छन्, उसै स्नेहका साथ तिमी यज्ञशालामा उच्च आसन ग्रहण गर।

**उत नो गोविदश्ववित्पवस्व सोमान्धसा। मक्षूतमेभिरहभिः ॥३॥**

हे सोमदेव ! हामीलाई गाई, अश्व, अन्न आदिका रूपमा अपार वैभव प्रदान गर।

**यो जिनाति न जीयते हन्ति शत्रुमभीत्य। स पवस्व सहस्रजित् ॥४॥**

शत्रुमाथि विजय प्राप्त गर्ने हे सोमदेव ! असुरको विनाश गर्ने र उनीहरूसित कहिल्यै नहार्ने तिमी पवित्र छौ।

[सूक्त - ५६]

ऋषि - अवत्सार काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

**परि सोम ऋतं बृहदाशुः पवित्रे अर्षति। विघ्नन्रक्षांसि देवयुः ॥१॥**

तीव्र गतिमा काम गर्ने, देवताका निकट जाने सोमरस शोधक प्रक्रियाअन्तर्गत शत्रुको संहार गर्दछ र हामीलाई उत्तम धन प्रदान गर्दछ।

**यत्सोमो वाजमर्षति शतं धारा अपस्युवः । इन्द्रस्य सख्यमाविशन् ॥२॥**

यज्ञको कामना गर्ने सोमरसका सयौं धाराले इन्द्रदेवसित मित्रभाव स्थापित गर्दा सोमरसबाट हामीलाई अन्न प्राप्त हुन्छ ।

**अभि त्वा योषणो दश जारं न कन्यानूषत । मृज्यसे सोम सातये ॥३॥**

स्त्रीले आफ्नो प्रेमी बोलाएझैं दस औंलाले पक्रेर सोमरस शुद्ध गराउँछन् ।

**त्वमिन्द्राय विष्णवे स्वादुरिन्दो परि स्रव । नॄन्त्स्तोतॄन्पाह्यंहसः ॥४॥**

हे सोमदेव ! विष्णु र इन्द्रदेवका निम्ति मधुर रस निकाल र स्तुति गर्ने याजकलाई पापकर्मबाट जोगाऊ ।

**[सूक्त - ५७]**

**ऋषि** - अवत्सार काश्यप । **देवता** - पवमान सोम । **छन्द** - गायत्री ।

**प्र ते धारा असश्चतो दिवो न यन्ति वृष्टयः । अच्छा वाजं सहस्रिणम् ॥१॥**

हे सोमदेव ! तिम्रा अविरल धाराले प्रचुर अन्न आदि प्रदान गर्दछ । आकाशबाट वर्षा भएझैं तिम्रो धारा पृथिवीमा अन्नको वर्षा गराउँछ ।

**अभि प्रियाणि काव्या विश्वा चक्षाणो अर्षति । हरिस्तुञ्जान आयुधा ॥२॥**

असल काम हेर्ने, हरियो आभासम्पन्न सोम शत्रुमाथि आयुध प्रहार गर्दै अगाडि बढ्छ ।

**स मर्मृजान आयुभिरिभो राजेव सुव्रतः । श्येनो न वंसु षीदति ॥३॥**

नित्य उत्तम कर्म गर्ने सोम ऋत्विक्हरूबाट संस्कारित भएपछि निर्भीक र तेजस्वी राजाजस्तै देखिन्छ । बाजपक्षीजस्तै तीव्र गतिमा त्यसलाई जलमा मिसाइन्छ ।

**स नो विश्वा दिवो वसूतो पृथिव्या अधि । पुनान इन्दवा भर ॥४॥**

हे सोमदेव ! तिमी पवित्र हुनाले द्युलोक र पृथिवीलोकमा व्याप्त रहँदै सबै किसिमका सम्पदाहरू प्रदान गर ।

**[सूक्त - ५८]**

**ऋषि** - अवत्सार काश्यप । **देवता** - पवमान सोम । **छन्द** - गायत्री ।

**तरत्स मन्दी धावति धारा सुतस्यान्धसः । तरत्स मन्दी धावति ॥१॥**

निकालिएका सोमरसको पुष्टिकारक धारा आनन्द प्रदान गर्दछ र त्यसले निकृष्ट संस्कार नहुने र उपासकलाई उँभो लगाउन सक्छ ।

**उस्रा वेद वसूनां मर्तस्य देव्यवसः । तरत्स मन्दी धावति ॥२॥**

सबै खालका वैभवले युक्त देदीप्यमान धाराले याजकलाई हरेक किसिमका संरक्षण गर्न जान्दछ । यस्तो आनन्दप्रदायक धारा तेज गतिले प्रवाहित हुन्छ ।

**ध्वस्रयोः पुरुषन्त्योरा सहस्राणि दद्महे । तरत्स मन्दी धावति ॥३॥**

ध्वस्र र पुरुषन्तिबाट हामी अपार वैभव प्राप्त गरौं । त्यस्तै आनन्दप्रद सोम अत्यन्त वेगले प्रवाहित हुन्छ ।

**आ ययोस्त्रिंशतं तना सहस्राणि च दद्महे । तरत्स मन्दी धावति ॥४॥**

हामीलाई तीस हजारभन्दा बढी विशालता प्राप्त गराउने आनन्ददायक सोम तीव्र गतिले सञ्चरित हुन्छ ।

**[सूक्त - ५९]**

**ऋषि** - अवत्सार काश्यप । **देवता** - पवमान सोम । **छन्द** - गायत्री ।

**पवस्व गोजिदश्वजिद्विश्वजित्सोम रण्यजित् । प्रजावद्रत्नमा भर ॥१॥**

हे सोमदेव ! तिमी गाई र अश्वका विजेता हौ । तिमीलाई सबैले बोलाऊन् र तिनलाई तिमी सन्तान एवं धनसम्पन्न बनाऊ ।

**पवस्वाद्भ्यो अदाभ्यः पवस्वौषधीभ्यः । पवस्व धिषणाभ्यः ॥२॥**

हे सोमदेव ! जलमा मिसिनका लागि तिमी आफ्नो रस प्रदान गर । दमनमा नपर्ने तिमी उत्तम औषधि विस्तार गर्न र हाम्रो बुद्धि पवित्र बनाउनका लागि रस प्रदान गर ।

त्वं सोम पवमानो विश्वानि दुरिता तर। कविः सीद नि बर्हिषि ॥३॥
हे शोधित सोमदेव ! सबै राक्षस पर हटाउँदै ज्ञानवान् भएर उत्तम आसनमा राज गर।

पवमान स्वर्विदो जायमानोऽभवो महान्। इन्दो विश्वाँ अभीदसि ॥४॥
हे सर्वज्ञाता ! यजमानलाई उत्तम फल प्रदान गर। उत्पन्न हुनासाथ वृद्धि प्राप्त गर्ने तिमी सबै शत्रुलाई पर भगाऊ।

[सूक्त - ६०]

ऋषि – अवत्सार काश्यप। देवता – पवमान सोम। छन्द – गायत्री।

प्र गायत्रेण गायत पवमानं विचर्षणिम्। इन्दुं सहस्रचक्षसम् ॥१॥
हे याजक हो ! सर्वद्रष्टा र हजारौं किसिमले देख्ने सोमरसलाई शोधित गर्दाखेरि गायत्री छन्दले स्तुति गर।

तं त्वा सहस्रचक्षसमथो सहस्रभर्णसम्। अति वारमपाविषुः ॥२॥
हे हजारौं आँखा भएका र हजारौंका पालक सोमदेव ! अवरोध नाघेर प्रवाहित होऊ।

अति वारान्पवमानो असिष्यदत्कलशाँ अभि धावति। इन्द्रस्य हार्द्याविशन् ॥३॥
पवित्र सोमरस चाल्नीबाट शुद्ध भएर इन्द्रदेवका हृदयमा प्रवेश गर्दै कलशमा द्रुतगतिले स्थापित हुन्छ।

इन्द्रस्य सोम राधसे शं पवस्व विचर्षणे। प्रजावद्रेत आ भर ॥४॥
हे विश्वद्रष्टा सोमदेव ! इन्द्रदेवको सन्तुष्टिका लागि तिमी शान्तिदायक रस प्रदान गर र हामीलाई बलशाली सन्तान देऊ।

[सूक्त - ६१]

ऋषि – अमहीयु आङ्गिरस। देवता – पवमान सोम। छन्द – गायत्री।

अया वीती परि स्रव यस्त इन्दो मदेष्वा। अवाहन्नवतीर्नव ॥१॥
हे सोमदेव ! इन्द्रदेवले सेवनार्थ तिमी कलशमा स्थित होऊ। तिम्रो रस युद्धमा शत्रुका सबै सहर नष्ट गर्नका लागि इन्द्रदेवलाई सामर्थ्य प्रदान गर्दछ।

पुरः सद्य इत्थाधिये दिवोदासाय शम्बरम्। अध त्यं तुर्वशं यदुम् ॥२॥
यज्ञ गर्ने दिवोदासका लागि इन्द्रदेवले सोम पिएर शम्बासुर, तुर्वश र यदुलाई मारे।

परि णो अश्वमश्वविद्गोमदिन्दो हिरण्यवत्। क्षरा सहस्रिणीरिषः ॥३॥
हे सोमदेव ! हामीलाई गाई, अश्व, सुवर्ण आदि ऐश्वर्य र मन परेको पोषक अन्न देऊ।

पवमानस्य ते वयं पवित्रमभ्युन्दतः। सखित्वमा वृणीमहे ॥४॥
हे परिष्कृत र शोधित सोम ! हामी मित्रका रूपमा तिम्रो सहयोग पाउने आशा गर्छौं।

ये ते पवित्रमूर्मयोऽभिक्षरन्ति धारया। तेभिर्नः सोम मृळय ॥५॥
हे सोम तिम्रा लहरमा शोधित हुँदै गरेका धाराले हामीलाई खुसी बनाउने कृपा गर।

स नः पुनान आ भर रयिं वीरवतीमिषम्। ईशानः सोम विश्वतः ॥६॥
हे संसारका नियन्ता सोम ! शोधित भएपछि हामीलाई धनधान्यसँगै असल सन्तान पनि तिमी प्रदान गर।

एतमु त्यं दश क्षिपो मृजन्ति सिन्धुमातरम्। समादित्येभिरख्यत ॥७॥
सिन्धु सोमकी माता हुन्। सोमदेवलाई शुद्ध गर्न दसै औंला र दस दिशा सहायक छन्। यिनी आदित्यसँगै देखिन्छन्।

समिन्द्रेणोत वायुना सुत एति पवित्र आ। सं सूर्यस्य रश्मिभिः ॥८॥
सूर्यका रश्मिले प्रकाशित हे सोमदेव ! असल पात्रमा स्थिर हुँदा इन्द्र र वायुदेवलाई तिमी प्राप्त हुन्छौ।

स नो भगाय वायवे पूष्णे पवस्व मधुमान्। चारुर्मित्रे वरुणे च ॥९॥
हे मधुर र मनोहर सोमदेव ! हाम्रा यज्ञमा भग, वायु, पुषा, मित्र र वरुणदेवका लागि तिमी शुद्ध होऊ।

उच्चा ते जातमन्धसो दिवि षद्भूम्या ददे। उग्रं शर्म महि श्रवः ॥१०॥
हे सोमदेव ! तिम्रा पोषक रसको जन्म द्युलोकमा भयो। त्यहाँ प्राप्त हुने हितकारी सुख र महान् अन्न हामी पृथ्वीमा प्राप्त गर्दछौं।

एना विश्वान्यर्य आ द्युम्नानि मानुषाणाम्। सिषासन्तो वनामहे ॥११॥
मानिसलाई आवश्यक पर्ने सबै खालका अन्न आदि हामीलाई सोमका सहायताले प्राप्त होस्। हामी तिनको राम्रो उपयोग गर्न चाहन्छौं।

स न इन्द्राय यज्यवे वरुणाय मरुद्भ्यः। वरिवोवित्परि स्रव ॥१२॥
हामीलाई ऐश्वर्यशाली बनाउने हे सोमदेव ! हामी इन्द्र, मरुत्गण र वरुणदेवका लागि यज्ञ गर्दछौं, उनैका निम्ति तिमी राम्ररी झरिदेऊ।

उपो षु जातमप्तुरं गोभिर्भङ्गं परिष्कृतम्। इन्दुं देवा अयासिषुः ॥१३॥
शत्रुसंहार गर्ने, राम्ररी तयार, जल र गाईका दुधमा मिसिएको यो सोमरस देवतालाई सन्तुष्ट गर्न सफल होस्।

तमिद्वर्धन्तु नो गिरो वत्सं संशिश्वरीरिव। य इन्द्रस्य हृदंसनिः ॥१४॥
हाम्रा बोलीले इन्द्रदेवका अत्यन्त प्रिय सोमको स्तुति गरोस्। बालकलाई आमाले आफ्ना दुधले पोसेझैं हाम्रा स्तुतिले सोमको यश बढाओस्।

अर्षा णः सोम शं गवे धुक्षस्व पिप्युषीमिषम्। वर्धा समुद्रमुक्थ्यम् ॥१५॥
स्तुति गर्न योग्य हे सोमदेव ! हाम्रा गाईलाई सुख प्रदान गर्ने, हाम्रो घर पौष्टिक अन्नले भर्ने तिमी हौ। जलमा मिसिएर सुपात्रमा स्थिर होऊ।

पवमानो अजीजनद्दिवश्चित्रं न तन्यतुम्। ज्योतिर्वैश्वानरं बृहत् ॥१६॥
पवित्र भएपछि सोमरसले दिव्यलोकमा विद्यमान, सबैलाई प्रकाशित गर्न समर्थ, महान् वैश्वानर ज्योतिलाई बिजुलीझैं प्रकट गरायो।

पवमानस्य ते रसो मदो राजन्नदुच्छुनः। वि वारमव्यमर्षति ॥१७॥
हे सुशोभित रहेका पवित्र सोमदेव ! दुष्टतारहित, आनन्दप्रद तिम्रो दिव्य रस अनश्वर चाल्नीबाट खसिरहेको हुन्छ।

पवमान रसस्तव दक्षो वि राजति द्युमान्। ज्योतिर्विश्वं स्वर्दृशे ॥१८॥
पवित्र हुन पुगेका सोमको शक्तिवर्द्धक र तेजस्वी रस सुन्दर देखिन्छ। विश्वभरि उसको प्रकाश र किरण देखिँदै छ।

यस्ते मदो वरेण्यस्तेना पवस्वान्धसा। देवावीरघशंसहा ॥१९॥
हे सोमदेव ! देवता आकृष्ट गर्ने र दुष्ट नाश गर्ने तिम्रो दिव्य रस अत्यन्त हर्षप्रद छ। त्यस पोषक रससहित तिमी कलशमा प्रतिष्ठित होऊ।

जघ्निर्वृत्रममित्रियं सस्निर्वाजं दिवेदिवे। गोषा उ अश्वसा असि ॥२०॥
हे अमित्र वृत्रका नाशक सोमदेव ! तिमी निरन्तर सङ्घर्षशील छौ र गाई तथा अश्वरूपी धन वृद्धि गराउँछौ।

सम्मिश्लो अरुषो भव सूपस्थाभिर्न धेनुभिः। सीदञ्छ्येनो न योनिमा ॥२१॥
हे सोमदेव ! बाजपक्षी आफ्ना गुँडमा सुन्दर देखिएझैं गाईसँग तिमी तेजस्वी हुन्छौ।

स पवस्व य आविथेन्द्रं वृत्राय हन्तवे। वव्रिवांसं महीरपः ॥२२॥
हे सोमदेव ! तिमी जलको प्रवाह रोक्ने वृत्रलाई मार्नका लागि इन्द्रदेवलाई प्रोत्साहित गर र तीव्र धारासँगै कलशमा छानिँदै जाऊ।

सुवीरासो वयं धना जयेम सोम मीढ्वः। पुनानो वर्ध नो गिरः ॥२३॥
हे पवित्र सोम ! हाम्रो स्तुति विस्तार गर। हामी शौर्यवान् भई शत्रुको धन विजय गरौं।

त्वोतासस्तवावसा स्याम वन्वन्त आमुरः। सोम व्रतेषु जागृहि ॥२४॥
हे सोमदेव ! तिम्रो संरक्षण प्राप्त गरेर हामी शत्रु संहार गरौं, व्रतशील र जाग्रत रहौं।

अपघ्नन्पवते मृधोऽप सोमो अराव्णः। गच्छन्निन्द्रस्य निष्कृतम् ॥२५॥
यस सोमले शत्रु र दान नदिनेलाई मारिदिन्छ। इन्द्रदेवकहाँ जाँदा छचल्किन्छ।

महो नो राय आ भर पवमान जही मृधः। रास्वेन्दो वीरवद्यशः ॥२६॥
हे पवित्रकर्मा सोमदेव ! हामीलाई अनेकौं साधन, पुत्र आदि र यश प्राप्त गराऊ। हाम्रा शत्रु मासिदेऊ।

न त्वा शतं चन ह्रुतो राधो दित्सन्तमा मिनन्। यत्पुनानो मखस्यसे ॥२७॥
हे पवित्र गराउने सोमदेव ! यज्ञ गर्नेलाई ऐश्वर्य प्रदान गर्न खोज्दा तिमीलाई सयौं शत्रुले पनि रोक्न सक्दैनन्।

पवस्वेन्दो वृषा सुतः कृधी नो यशसो जने। विश्वा अप द्विषो जहि ॥२८॥
हे पेलेर तयार भएका सोमदेव ! तिमी असल बल बढाउँछौ। मानिसमध्ये हामीलाई यशस्वी बनाऊ र हाम्रा सबै शत्रु नाश गर।

अस्य ते सख्ये वयं तवेन्दो द्युम्न उत्तमे। सासह्याम पृतन्यतः ॥२९॥
हे सोमदेव ! तिम्रा मित्रभावले हामीलाई तेजस्वी बनाएको हुनाले आक्रमणकारी शत्रुमाथि हामी विजय प्राप्त गर्न सक्छौं।

या ते भीमान्यायुधा तिग्मानि सन्ति धूर्वणे। रक्षा समस्य नो निदः ॥३०॥
हे शत्रु नाश गर्ने सोमदेव ! तिखो शस्त्र लिएर हामीलाई शत्रुका निन्दाबाट जोगाऊ।

[सूक्त - ६२]

**ऋषि** - जमदग्नि भार्गव। **देवता** - पवमान सोम। **छन्द** - गायत्री।

एते असृग्रमिन्दवस्तिरः पवित्रमाशवः। विश्वान्यभि सौभगा ॥१॥
चाल्नीतर्फ द्रुतगतिले जाँदै गरेका सोमरसलाई सबै खालका सौभाग्य प्राप्तिका लागि ऋत्विक्हरू शोधित गर्दछन्।

विघ्नन्तो दुरिता पुरु सुगा तोकाय वाजिनः। तना कृण्वन्तो अर्वते ॥२॥
बलवर्द्धक, पापनाशक सोमरस हामी र हाम्रा सन्ततिका लागि पशु एवं धन प्रदान गर्ने मार्ग आफैं बनाउँछ।

कृण्वन्तो वरिवो गवेऽभ्यर्षन्ति सुष्टुतिम्। इडामस्मभ्यं संयतम् ॥३॥
हामी र हाम्रा गाईलाई उत्तम धन र पौष्टिक अन्न प्रदान गर्ने सोमदेव हाम्रो सुन्दर प्रार्थना स्वीकार गर्दछन्।

असाव्यंशुर्मदायाप्सु दक्ष गिरिष्ठाः। श्येनो न योनिमासदत् ॥४॥
पर्वतमा उत्पन्न सोम आनन्द वृद्धिका लागि पेलिएर जलका संयोगले व्यापक भयो। त्यही सोम बाजपक्षीझैं आफ्ना ठाउँमा स्थित छ।

शुभ्रमन्धो देववातमप्सु धूतो नृभिः सुतः। स्वदन्ति गावः पयोभिः ॥५॥
याजकले पेलेर तयार पारेको, देवताको असल अन्न, जल मिसिएको पवित्र सोमरसमा गाईले आफ्नो दुध मिसाएर अझै मिठो बनाइरहेका छन्।

आदीमश्वं न हेतारोऽशूशुभन्नमृताय। मध्वो रसं सधमादे ॥६॥
अश्वजस्तै फुर्तिला सोमलाई अमरत्व प्राप्तिका आशाले याजकहरू यज्ञमा राख्दछन्।

यास्ते धारा मधुश्चुतोऽसृग्रमिन्द ऊतये। ताभिः पवित्रमासदः ॥७॥
मधुर रसका धाराले सबैलाई संरक्षण दिने हे सोमदेव ! धारासँगै शुद्धता धारण गर।

सो अर्षेन्द्राय पीतये तिरो रोमाण्यव्यया। सीदन्योना वनेष्वा ॥८॥
ऊनीका चाल्नीले शुद्ध बनाइएने हे सोमदेव ! यज्ञका मूल स्थानमा स्थापित भएर तिमी इन्द्रदेवलाई सन्तुष्ट गर्नका लागि तयार होऊ।

त्वमिन्दो परि स्रव स्वादिष्ठो अङ्गिरोभ्यः। वरिवोविद् घृतं पयः ॥९॥
धन र वैभव प्रदान गर्ने हे सोम ! अङ्गिरा आदि ऋषिका लागि तिमी घिउ, दुधयुक्त पौष्टिक आहार प्रदान गर।

अयं विचर्षणिर्हितः पवमानः स चेतति। हिन्वान आप्यं बृहत् ॥१०॥
विशिष्ट बुद्धिवर्द्धक, पात्रमा स्थित, शुद्ध गरिएको सोमरस पानीमा मिसिएर प्रचुर अन्न प्रदान गर्दै यशस्वी हुन्छ।

एष वृषा वृषव्रतः पवमानो अशस्तिहा। करद्वसूनि दाशुषे ॥११॥
शत्रुनाशक, कामना पूरा गराउने बलशाली सोम असल कार्यमा खट्नेलाई धन दिन्छ।

आ पवस्व सहस्रिणं रयिं गोमन्तमश्विनम्। पुरुश्चन्द्रं पुरुस्पृहम् ॥१२॥
हे सोमदेव ! गाईले युक्त, अनेकौंले खोज्ने हजारौं तेजस्वी धन हामीलाई प्रदान गर।

एष स्य परि षिच्यते मर्मृज्यमान आयुभिः। उरुगायः कविक्रतुः ॥१३॥
सोम निकालेर याजकहरू शोधन गर्दै बुद्धिपूर्वक कर्म गर्दछन्। त्यसो हुनाले अनेकौं किसिमले सोमरस स्तुत्य हुन्छ।

सहस्रोतिः शतामघो विमानो रजसः कविः। इन्द्राय पवते मदः ॥१४॥
हजारौं किसिमले संरक्षण गर्ने, सयौं किसिमका धन दिने, विभिन्न लोकको निर्माण गर्ने र आनन्ददायी ज्ञानी सोम इन्द्रदेवका लागि शोधित गरिन्छ।

गिरा जात इह स्तुत इन्दुरिन्द्राय धीयते। विर्योना वसताविव ॥१५॥
हाम्रा वाणीले स्तुति गर्दा परिष्कृत सोमरस चरो गुँडमा आएझैं इन्द्रदेवसम्म पुग्छ।

पवमानः सुतो नृभिः सोमो वाजमिवासरत्। चमूषु शक्मनासदम् ॥१६॥
याजकले निकालेको शोधित सोमरस आफ्ना सामर्थ्यले योद्धा लडाइँमा गएझैं पात्रमा जाने गर्दछ।

तं त्रिपृष्ठे त्रिवन्धुरे रथे युञ्जन्ति यातवे। ऋषीणां सप्त धीतिभिः ॥१७॥
याजकहरूले तीनै सवनमा ऋषिका यज्ञरूपी रथमा राखेर सात छन्दमा तीनै वेद गाउँदै सोमरसलाई देवताकहाँ लैजान्छन्।

तं सोतारो धनस्पृतमशुं वाजाय यातवे। हरिं हिनोत वाजिनम् ॥१८॥
सोमरस शोधित गर्ने हे याजक हो ! युद्धमा जानका लागि अश्व सजाएझैं हरियो आभा भएका सोमलाई यज्ञका निम्ति अलङ्कृत गर।

आविशन्कलशं सुतो विश्वा अर्षन्नभि श्रियः। शूरो न गोषु तिष्ठति ॥१९॥
परिष्कृत सोमरस कलशमा भरिएका बेला सुशोभित हुन्छ। गाईको सुरक्षा वीरले गरेझैं यस सोमले यज्ञको सुरक्षा गर्दछ।

आ त इन्दो मदाय कं पयो दुहन्त्यायवः। देवा देवेभ्यो मधु ॥२०॥
हे सोमदेव ! सबै देवता र सबै याजक मिलेर देवतालाई कस्तो आनन्द प्रदान गर्नका लागि दुधमा मिसाएको मिठो सोमरस तयार गर्दछन् ?

आ नः सोमं पवित्र आ सृजता मधुमत्तमम्। देवेभ्यो देवश्रुत्तमम् ॥२१॥
हे याजक हो ! देवताको अति प्रिय र मिठो सोमरस शोधन यन्त्रमा राख।

एते सोमा असृक्षत गृणानाः श्रवसे महे। मदिन्तमस्य धारया ॥२२॥
परम आनन्दले युक्त सोमरस स्तुतिगानपछि हामीलाई असल शक्ति प्रदान गर्नका लागि धारो लागेर कलशमा खस्ने गर्दछ।

अभि गव्यानि वीतये नृम्णा पुनानो अर्षसि। सनद्वाजः परि स्रव ॥२३॥
सम्पूर्ण मानिसलाई सुख प्रदान गर्ने हे सोमदेव ! तिमी देवताको सेवनका लागि गाईको दुध आदिमा मिसिएर अन्न प्रदान गर्दै कलशमा जम्मा होऊ।

उत नो गोमतीरिषो विश्वा अर्ष परिष्टुभः। गृणानो जमदग्निना ॥२४॥
हे सोमदेव ! जमदग्नि ऋषिले गरेका स्तुतिले युक्त भएर हामीलाई गाईसँगै अन्य सबै प्रशंसनीय पोषक आहार प्रदान गर।

पवस्व वाचो अग्रियः सोम चित्राभिरूतिभिः। अभि विश्वानि काव्या ॥२५॥
हे सर्वश्रेष्ठ सोमदेव ! आफ्ना रक्षणसामर्थ्यसँगै तिमी हाम्रा वाणीमा प्रवेश गर र सबै काव्यका स्तुतिमा सञ्चरित होऊ।

त्वं समुद्रिया अपोऽग्रियो वाच ईरयन्। पवस्व विश्वमेजय ॥२६॥
हे भलो गर्ने सोमदेव ! हाम्रो स्तुति सुनेर प्रसन्न हुने देवलोकको जललाई तिमी अगुवा भएर आह्वान गर।

तुभ्येमा भुवना कवे महिम्ने सोम तस्थिरे। तुभ्यमर्षन्ति सिन्धवः ॥२७॥

हे दूरदर्शी सोमदेव ! तिम्रो महानताका प्रभावले यो विश्व अडिएको छ। तिम्रा लागि दुध उपलब्ध गराएर देवतालाई सन्तुष्ट गर्ने गाई तिमीकहाँ आउँदै छन्।

प्र ते दिवो न वृष्टयो धारा यन्त्यसश्चतः। अभि शुक्रामुपस्तिरम् ॥२८॥

हे सोमदेव ! प्रवाहित हुने तिम्रा रसको धारो द्युलोकबाट वर्षा भएझैँ चाल्नीबाट छानिएर आउने गर्छन्।

इन्द्रायेन्दुं पुनीतनोग्रं दक्षय साधनम्। ईशानं वीतिराधसम् ॥२९॥

हे याजक हो ! बलवान्, वेगवान्, बलवर्द्धक, मुख्य साधन, धनको अधिपति, शक्तिको धनी सोमलाई इन्द्रदेवका निम्ति प्रस्तुत गर।

पवमान ऋतः कविः सोमः पवित्रमासदत्। दधत्स्तोत्रे सुवीर्यम् ॥३०॥

तेज प्रदायक, पवित्रकारक, सत्यरूप, मेधावी सोमले स्तोत्रलाई तेज प्रदान गर्दछ।

[सूक्त - ६३]

ऋषि - निध्रुवि काश्यप। देवता - पवमान सोम। छन्द - गायत्री।

आ पवस्व सहस्रिणं रयिं सोम सुवीर्यम्। अस्मे श्रवांसि धारय ॥१॥

हे सोमदेव ! हामीलाई हजारौँ किसिमका बलले युक्त असल धन र अन्न प्रदान गर।

इषमूर्जं च पिन्वस इन्द्राय मत्सरिन्तमः। चमूष्वा नि षीदसि ॥२॥

हे सोमदेव ! तिमी अत्यन्त आनन्द प्रदान गर्दछौ। त्यसैले इन्द्रदेवका लागि अन्न र बल बढाउँदै यज्ञस्थलमा प्रतिष्ठित होऊ।

सुत इन्द्राय विष्णवे सोमः कलशे अक्षरत्। मधुमाँ अस्तु वायवे ॥३॥

पेलेर तयार गरिएको सोमरस इन्द्र, विष्णु र वायुदेवका लागि कलशमा प्रतिष्ठित हुन्छ। त्यो सोमरस मिठो होस्।

एत असृग्रमाशवोऽति ह्वरांसि बभ्रवः। सोमा ऋतस्य धारया ॥४॥

खैरो रङ्गको द्रुतगामी सोमरस जलधारासँगै अगाडि बढ्दछ।

इन्द्रं वर्धन्तो अप्तुरः कृण्वन्तो विश्वमार्यम्। अपघ्नन्तो अराव्णः ॥५॥

इन्द्रदेवको यश बढाउने, प्रजालाई सन्मार्गतिर प्रेरित गर्ने, सम्पूर्ण विश्वलाई असल बनाउने र दान नगर्ने बानी भएकालाई विनाश गर्ने यही सोम नै हो।

सुता अनु स्वमा रजोऽभ्यर्षन्ति बभ्रवः। इन्द्रं गच्छन्त इन्दवः ॥६॥

निकालेर तयार गरिएको खैरो रङ्गको सोमरस आफ्ना स्थानमा पुग्न इन्द्रदेवतिर जान्छ।

अया पवस्व धारया यया सूर्यमरोचयः। हिन्वानो मानुषीरपः ॥७॥

हे सोमदेव ! जसका कारणले तिमी मानिसका लागि जलरूपी रस बढाउँछौ, जसबाट सूर्यदेवलाई प्रकाशित गर्दछौ उसै असल धारासँगै तिमी प्रवाहित होऊ।

अयुक्त सूर एतशं पवमानो मनावधि। अन्तरिक्षेण यातवे ॥८॥

पवित्र सोम चाहेकोजस्तो उचाइमा पुग्ने गति पाउनका लागि सङ्कल्पका साथ प्रयासरत याजकलाई सूर्यको अश्वजस्तै वेग प्रदान गर्न सक्दछ।

उत त्या हरितो दश सूरो अयुक्त यातवे। इन्दुरिन्द्र इति ब्रुवन् ॥९॥

इन्द्रदेवको नाम उच्चारण गर्ने सोमले हरित वर्णका अश्वलाई सूर्यको रथजस्तै गरी दसै दिशामा जानका लागि नियोजित गर्दछ।

परीतो वायवे सुतं गिर इन्द्राय मत्सरम्। अव्यो वारेषु सिञ्चत ॥१०॥

हे स्तोता हो ! आनन्ददायी सोमलाई वायु र इन्द्रदेवका लागि अविनाशी चाल्नीले छानेर सोमरस शोधित गर।

पवमान विदा रयिमस्मभ्यं सोम दुष्टरम्। यो दूणाशो वनुष्यता ॥११॥

हे परिष्कृत हुने सोमदेव ! शत्रुका लागि दुर्लभ र दुष्टले नाश नगर्ने धन हामीलाई देऊ।

अभ्यर्ष सहस्रिणं रयिं गोमन्तमश्विनम्। अभि वाजमुत श्रवः ॥१२॥

हे सोमदेव ! तिमी गाई र अश्वले युक्त हजारौँ धन, बल र अन्न हामीलाई प्रदान गर।

**सोमो देवो न सूर्योऽद्रिभिः पवते सुतः । दधानः कलशे रसम् ॥१३॥**
अद्रिबाट निकालिएको देवताजस्तो तेजस्वी सोमरस कलशमा स्थापित छ ।

**एते धामान्यार्या शुक्रा ऋतस्य धारया । वाजं गोमन्तमक्षरन् ॥१४॥**
परिष्कृत सोमरस याजकका घरमा पशुधन र अन्नका रूपमा प्रवाहित हुन्छ ।

**सुता इन्द्राय वज्रिणे सोमासो दध्याशिरः । पवित्रमत्यक्षरन् ॥१५॥**
प्रकट भएको सोम दहीमा मिसाएर वज्र धारण गर्ने इन्द्रदेवलाई समर्पित गरिन्छ ।

**प्र सोम मधुमत्तमो राये अर्ष पवित्र आ । मदो यो देववीतमः ॥१६॥**
हे सोमदेव ! देवताका निम्ति तिम्रो आनन्ददायी रस चाल्नीले छानेपछि परिष्कृत भएर ऐश्वर्य वृद्धि गर्ने होस् ।

**तमी मृजन्त्यायवो हरिं नदीषु वाजिनम् । इन्दुमिन्द्राय मत्सरम् ॥१७॥**
इन्द्रदेवलाई खुसी पार्ने हरित आभा हुने सोमलाई याजकहरू नदीका जलमा मिसाएर शुद्ध गराउँदै बलवर्द्धक बनाउँछन् ।

**आ पवस्व हिरण्यवदश्वावत् सोम वीरवत् । वाजं गोमन्तमा भर ॥१८॥**
हे सोमदेव ! हामीलाई सुन आदि धन, अश्व र वीर सन्ततिले युक्त वैभव प्रदान गर । गाईका दुधले युक्त अन्नले हामीलाई सम्पन्न बनाइदेऊ ।

**परि वाजे न वाजयुमव्यो वारेषु सिञ्चत । इन्द्राय मधुमत्तमम् ॥१९॥**
हे याजक हो ! लड्न चाहने योद्धालाई सङ्ग्राममा पठाएझैं अत्यन्त मधुर सोमरस इन्द्रदेवका निम्ति चाल्नीले छान्नका लागि खन्याओ ।

**कविं मृजन्ति मर्ज्यं धीभिर्विप्रा अवस्यवः । वृषा कनिक्रदर्षति ॥२०॥**
संरक्षणको विचार भएका याजकहरू ज्ञानवर्द्धक सोमलाई आफ्ना औंलाले शोधन गर्दछन् । त्यो बलवर्द्धक सोम शब्दसँगै भाँडामा एकत्र हुन्छ ।

**वृषणं धीभिरप्तुरं सोममृतस्य धारया । मती विप्राः समस्वरन् ॥२१॥**
धाराका रूपमा जलसँग मिसिने बलवर्द्धक सोमरसलाई ज्ञानीहरू आफ्नो बुद्धिअनुसार स्तुति गर्दछन् ।

**पवस्व देवायुषगिन्द्रं गच्छतु ते मदः । वायुमा रोह धर्मणा ॥२२॥**
हे दिव्य गुणले युक्त सोमदेव ! तिमी छानिनका लागि भाँडामा जाऊ । तिम्रो अनन्ददायी रस इन्द्रदेवलाई प्राप्त होस् । तिमी दिव्य रूपले वायुसित मिसिन पुग ।

**पवमान नि तोशसे रयिं सोम श्रवाय्यम् । प्रियः समुद्रमा विश ॥२३॥**
हे पवित्र सोमरस ! तिमी प्रशंसनीय ऐश्वर्यका लागि दुष्टलाई सताउँछौ । हामी यज्ञका कलशमा तिम्रो आह्वान गर्दछौं ।

**अपघ्नन् पवसे मृधः क्रतुवित्सोम मत्सरः । नुदस्वादेवयुं जनम् ॥२४॥**
हे आनन्द प्रदायक, सत्ययज्ञका ज्ञाता सोमदेव ! विकृति विनाश गर्दै देवत्व विरोधीलाई तिमी विनाश गर ।

**पवमाना असृक्षत सोमाः शुक्रास इन्दवः । अभि विश्वानि काव्या ॥२५॥**
शुभ्र ज्योतिले सम्पन्न पवित्रता प्राप्त गरेको सोमरस वेदमन्त्रका स्तुतिसँगै प्रकट हुन्छ ।

**पवमानास आशवः शुभ्रा असृग्रमिन्दवः । घ्नन्तो विश्वा अप द्विषः ॥२६॥**
उज्ज्वल, पवमान सोम विकृति हटाउँदै तीव्र गतिले सुन्दर पात्रमा स्थिर हुँदै छ ।

**पवमाना दिवस्पर्यन्तरिक्षादसृक्षत । पृथिव्या अधि सानवि ॥२७॥**
शोधन गरिएको सोम पृथ्वीको उच्च भाग आकाशको किरण र अन्तरिक्षको वर्षाजस्तै गरी प्रकट हुन्छ ।

**पुनानः सोम धारयेन्दो विश्वा अप स्रिधः । जहि रक्षांसि सुक्रतो ॥२८॥**
हे असल कर्म गर्ने तेजस्वी सोमदेव ! हाम्रा सबै शत्रु पराजित गर्दै पर पुऱ्याऊ । तिमी आफैं पनि धाराका रूपमा शोधित भएर पवित्र होऊ ।

अपघ्नन्त्सोम रक्षसोऽभ्यर्ष कनिक्रदत्। द्युमन्तं शुष्ममुत्तमम् ॥२९॥
हे सोमदेव ! असुर नष्ट गरेर शब्दनाद गर्दै हामीलाई असल तेजस्वी बल प्रदान गर।

अस्मे वसूनि धारय सोम दिव्यानि पार्थिवा। इन्दो विश्वानि वार्या ॥३०॥
हे सोमदेव ! हामीलाई आकाश र पृथ्वीमा उत्पन्न भएका, स्वीकार गर्न योग्य सम्पूर्ण धन प्रदान गर।

[सूक्त - ६४]

ऋषि - कश्यप मारीच। देवता - पवमान सोम। छन्द - गायत्री।

वृषा सोम द्युमाँ असि वृषा देव वृषव्रतः। वृषा धर्माणि दधिषे ॥१॥
हे पराक्रमी र तेजस्वी सोमदेव ! तिमी सधैं बल बढाउने क्षमतायुक्त गुण भएका छौ।

वृष्णस्ते वृष्ण्यं शवो वृषा वनं वृषा मदः। सत्यं वृषन् वृषेदसि ॥२॥
हे वर्षणशील सोम ! तिम्रो बल नै वर्षणशील छ, तेज नै वर्षणशील छ, आनन्द पनि वर्षणशील छ र बलशाली छ। हे बलशाली ! वास्तवमा तिमी बलशाली र वर्षणशील हुनाले नै वृषा हौ।

अश्वो न चक्रदो वृषा सं गा इन्दो समर्वतः। वि नो राये दुरो वृधि ॥३॥
हे सोमदेव ! तिमी बलशाली हौ, पशुधनको वृद्धि गर्छौ। हामीलाई ऐश्वर्य प्राप्त गराऊ।

असृक्षत प्र वाजिनो गव्या सोमासो अश्वया। शुक्रासो वीरयाशवः ॥४॥
बल र स्फुर्ति बढाउने सोमरस तेजस्वी छ। गाई, अश्व र वीर पुत्रको कामना गर्नेहरूले पेलेर तयार पार्ने गर्दछन्।

शुम्भमाना ऋतायुभिर्मृज्यमाना गभस्त्योः। पवन्ते वारे अव्यये ॥५॥
याजकहरूका आफ्नै हातले तयार गरेको, विशेष रूपले शोभायमान सोमरस शोधक यन्त्रबाट छानिएको हुन्छ।

ते विश्वा दाशुषे वसु सोमा दिव्यानि पार्थिवा। पवन्तामान्तरिक्ष्या ॥६॥
दिव्य सोमरसले हविदातालाई स्वर्गका, अन्तरिक्षका र भौतिक विभूतिले युक्त गरोस्।

पवमानस्य विश्ववित्प्र ते सर्गा असृक्षत। सूर्यस्येव न रश्मयः ॥७॥
हे सर्वज्ञ सोम ! सूर्यको रश्मिझैं पवित्र हुँदै, तीव्र वेगले धारो तल आइरहेको छ।

केतुं कृण्वन्दिवस्परि विश्वा रूपाभ्यर्षसि। समुद्रः सोम पिन्वसे ॥८॥
हे विश्वव्यापी सोमदेव ! अन्तरिक्षमा ज्ञानको चेतनाका रूपमा व्याप्त भएर हामीलाई वर्षाको जलका माध्यमबाट विभिन्न वैभव प्रदान गर।

हिन्वानो वाचमिष्यसि पवमान विधर्मणि। अक्रान्देवो न सूर्यः ॥९॥
सूर्यका रश्मिझैं प्रकाशित हुने हे सोमदेव ! स्तुति गानसँगै पवित्र भएर ध्यानपूर्वक पात्रमा स्थिर भइरहेका छौ।

इन्दुः पविष्ट चेतनः प्रियः कवीनां मती। सृजदश्वं रथीरिव ॥१०॥
रथीले अश्व प्रेरित गरेझैं चेतनासम्पन्न सोम सूक्ष्मदर्शीहरूका बुद्धिले प्रेरित हुन्छ।

ऊर्मिर्यस्ते पवित्र आ देवावीः पर्यक्षरत्। सीदन्नृतस्य योनिमा ॥११॥
हे सोमदेव ! तिम्रा जुन धाराले देवतालाई सन्तुष्ट गराउँछ, त्यो चाल्नीबाट प्रवाहित हुँदै यज्ञमा पुगेर प्रतिष्ठित हुन्छ।

स नो अर्ष पवित्र आ मदो यो देववीतमः। इन्दविन्द्राय पीतये ॥१२॥
हे सोमदेव ! देवताका अतिप्रिय र आनन्ददायी सोमरस इन्द्रदेवले पान गर्नका लागि राम्रो शोधन प्रणालीबाट प्रवाहित हुन्छ।

इषे पवस्व धारया मृज्यमानो मनीषिभिः। इन्दो रुचाभि गा इहि ॥१३॥
हे सोमदेव ! तिमी ज्ञानी ऋत्विक्‌बाट परिष्कृत हुँदै पोषक रसका लागि धाराका रूपमा शुद्ध होऊ र गाईको दुधसँग मिसिएर प्रकाशित होऊ।

पुनानो वरिवस्कृध्यूर्जं जनाय गिर्वणः। हरे सृजान आशिरम् ॥१४॥
हे हरित आभासम्पन्न सोम ! दुधसित मिसाएर शोधन गरिने तिमी याजकलाई अन्न आदिले परिपूर्ण गर।

पुनानो देववीतय इन्द्रस्य याहि निष्कृतम्। द्युतानो वाजिभिर्यतः ॥१५॥
हे स्तुत्य, बलवान् सोम ! यज्ञका निम्ति याजकले शोधन गरिएकाले इन्द्रदेवकहाँ पुग।

प्र हिन्वानास इन्दवोऽच्छा समुद्रमाशवः। धिया जूता असृक्षत ॥१६॥
अन्तरिक्षमा स्थित वेगवान् सोम औंलाले निचोर्दा रस प्रदान गर्दछ।

मर्मृजानास आयवो वृथा समुद्रमिन्दवः। अग्मन्नृतस्य योनिमा ॥१७॥
शोधित हुने गतिमान् सोमरस सहजैसित अन्तरिक्षबाट यज्ञस्थलमा आउँछ।

परि णो याह्यस्मयुर्विश्वा वसून्योजसा। पाहि नः शर्म वीरवत् ॥१८॥
हे सोमदेव ! हाम्रा यज्ञमा पुग्ने विचार भएका तिमी आफ्ना सामर्थ्यले सम्पूर्ण धन र हाम्रा सन्तानयुक्त घरको संरक्षण गर।

मिमाति वह्निरेतशः पदं युजान ऋक्वभिः। प्र यत्समुद्र आहितः ॥१९॥
सोमलाई याजकहरूले यज्ञमा बोलाउँदा जलमा मिसिने बेलामा शब्द निकाल्दछ।

आ यद्योनिं हिरण्ययमाशुर्ऋतस्य सीदति। जहात्यप्रचेतसः ॥२०॥
वेगवान् सोम सुनजस्तो भएर यज्ञस्थलमा प्रतिष्ठित हुँदा याजकको अज्ञान हटाउँछ।

अभि वेना अनूषतेयक्षन्ति प्रचेतसः। मज्जन्त्यविचेतसः ॥२१॥
स्तोताहरू स्तुति गर्दछन्, असल ज्ञानसम्पन्न व्यक्ति यजनको कामना गर्दछन् र घमन्ड गर्नेहरू सबै डुब्दछन्।

इन्द्रायेन्दो मरुत्वते पवस्व मधुमत्तमः। ऋतस्य योनिमासदम् ॥२२॥
अत्यन्त मधुर हे सोमदेव ! मरुत्हरूले सहायता गरेका इन्द्रदेवका लागि यज्ञस्थलमा सुशोभित कलशमा प्रतिष्ठित होऊ।

तं त्वा विप्रा वचोविदः परिष्कृण्वन्ति वेधसः। सं त्वा मृजन्त्यायवः ॥२३॥
सिङ्गै विश्व धारण गर्ने हे सोमदेव ! वाणीका विशेषज्ञ याजक स्तुतिले तिम्रो शोभा बढाउँदै तिमीलाई अत्यधिक पवित्र गराइरहेका छन्।

रसं ते मित्रा अर्यमा पिबन्ति वरुणः कवे। पवमानस्य मरुतः ॥२४॥
हे नूतन तत्त्वदर्शी सोम ! पवित्रतायुक्त तिम्रो रस मित्र, वरुण, अर्यमा र मरुत्गणले सेवन गरुन्।

त्वं सोम विपश्चितं पुनानो वाचमिष्यसि। इन्दो सहस्रभर्णसम् ॥२५॥
हे तेजस्वी सोमदेव ! तिमी शोधित हुँदाखेरि हजारौं पवित्र स्तोत्रलाई प्रेरित गर्दछौ।

उतो सहस्रभर्णसं वाचं सोम मखस्युवम्। पुनान इन्दवा भर ॥२६॥
शोधित हुने हे सोमदेव ! हामीलाई यज्ञमा हजारौं स्तोत्र गायन गर्ने प्रेरणा देऊ।

पुनान इन्दवेषां पुरुहूत जनानाम्। प्रियः समुद्रमा विश ॥२७॥
हे सोमदेव ! सबैका प्रिय हुनाले तिमी अनेकौं किसिमका स्तुतिले पवित्र भएर जलमा मिश्रित होऊ।

दविद्युतत्या रुचा परिष्टोभन्त्या कृपा। सोमाः शुक्रा गवाशिरः ॥२८॥
कान्तिमान्, तेजस्वी, शब्दयुक्त धाराले शुद्ध भएका सोमलाई गाईका दुधमा मिसाएर तयार गरिन्छ।

हिन्वानो हेतृभिर्यत आ वाजं वाज्यक्रमीत्। सीदन्तो वनुषो यथा ॥२९॥
युद्धभूमिमा यशस्वी शूरवीर घुमेझैं याजकबाट प्रशंसित, बलवर्द्धक सबैको हितकारी, संस्कारित सोम यज्ञभूमिमा प्रतिष्ठा आर्जन गर्दछ।

ऋधक्सोम स्वस्तये सञ्जग्मानो दिवः कविः। पवस्व सूर्यो दृशे ॥३०॥
हे ज्ञानले सम्पन्न सोमदेव ! तिमी तेजस्वी सूर्यदेवजस्तै दिव्य आभायुक्त भएर सबैको कल्याणका लागि संस्कारित होऊ।

[सूक्त - ६५]

**ऋषि** – भृगुवारुणि या जमदग्नि भार्गव। **देवता** – पवमान सोम। **छन्द** – गायत्री।

हिन्वन्ति सूरमुस्रयः स्वसारो जामयस्पतिम्। महामिन्दुं महीयुवः ॥१॥
सर्वत्र गमनशील, एकै स्थानमा उत्पन्न दिदीबहिनी सामर्थ्यवान्, शूर, पालक, महान् सोमलाई प्रेरित गर्दछन्।

पवमान रुचारुचा देवो देवेभ्यस्परि। विश्वा वसून्या विश ॥२॥
शुद्ध गरिएका हे तेजस्वी सोमदेव ! देवतालाई समर्पित गर्नका लागि तिमी तयार भएका हौ। तिमी सबै किसिमका सम्पदा हामीलाई देऊ।

आ पवमान सुष्टुतिं वृष्टिं देवेभ्यो दुवः। इषे पवस्व संयतम् ॥३॥
हे पवित्र सोमदेव ! देवताबाट आशीर्वाद प्राप्त भएझैं स्तुति गर्नेका लागि योग्यताको वर्षा गराऊ। त्यस वर्षाले हामीलाई अन्न प्रदान गर्न सकोस्।

वृषा ह्यसि भानुना द्युमन्तं त्वा हवामहे। पवमान स्वाध्यः ॥४॥
हे पवित्र हुने बलवर्द्धक सोमदेव ! तिमी सबैलाई समान दृष्टिले हेर्ने भईकन तेजस्वी छौ। यस यज्ञमा हामी तिमीलाई बोलउँछौं।

आ पवस्व सुवीर्यं मन्दमानः स्वायुध। इहो ष्विन्दवा गहि ॥५॥
हे उत्तम आयुधले युक्त सोमदेव ! आनन्ददायी बनेर हामीलाई असल पराक्रमी क्षमताले युक्त गराऊ र हाम्रा यज्ञमा आएर सुशोभित होऊ।

यदद्भिः परिषिच्यसे मृज्यमानो गभस्त्योः। द्रुणा सधस्थमश्नुषे ॥६॥
ऋत्विक्‌हरूका दुवै हातले शोधित हे सोमदेव ! जलमा मिसाएपछि तिमीलाई कलशमा स्थापित गरिन्छ।

प्र सोमाय व्यश्ववत्पवमानाय गायत। महे सहस्रचक्षसे ॥७॥
हे याजक हो ! व्यश्व ऋषिले झैं महान्, हजारौं आँखा भएका सोमको गुण गाओ।

यस्य वर्णं मधुश्चुतं हरिं हिन्वन्त्यद्रिभिः। इन्दुमिन्द्राय पीतये ॥८॥
हरियो आभा हुने सोमलाई ढुङ्गामा कुटेर रस निकालिन्छ। त्यो मधुर र शत्रुविनाशक सोमरस इन्द्रदेवलाई समर्पित गरिन्छ।

तस्य ते वाजिनो वयं विश्वा धनानि जिग्युषः। सखित्वमा वृणीमहे ॥९॥
सबै धनमाथि विजय पाउने हे सोमदेव ! तिमीबाट हामी मित्रभावको आशा गर्दछौं।

वृषा पवस्व धारया मरुत्वते च मत्सरः। विश्वा दधान ओजसा ॥१०॥
हे सोमदेव ! तिमी उद्‌गाताका लागि वेगवान् धाराले कलशमा प्रवेश गर र मरुत्‌हरूले सेवा गरिएका इन्द्रदेवका लागि सामर्थ्य र हर्ष बढाउने सिद्ध होऊ।

तं त्वा धर्तारमोण्योः पवमान स्वर्दृशम्। हिन्वे वाजेषु वाजिनम् ॥११॥
हे शोधित सोमदेव ! आत्मदर्शी, बलवान् हुनाले तिमी द्युलोकबाट पृथिवीलोकसम्म सबैलाई संरक्षण प्रदान गर्दछौ। बलवान् हुनाले तिमीलाई हामी बलले गरिने युद्धजस्ता काममा प्रेरित गर्दछौं।

अया चित्तो विपानया हरिः पवस्व धारया। युजं वाजेषु चोदय ॥१२॥
हे हरियो रङ्ग भएका सोमदेव ! ज्ञानयुक्त बुद्धि वा सचेत औंलाले परिष्कृत गरिएका तिमी चुहिएर आफ्ना सखा इन्द्रदेवलाई सङ्ग्राममा जानका लागि प्रेरित गर।

आ न इन्दो महीमिषं पवस्व विश्वदर्शतः। अस्मभ्यं सोम गातुवित् ॥१३॥
हे सर्वद्रष्टा सोमदेव ! हामीलाई भरपूर अन्न प्रदान गर। तिमीसबैका पथप्रदर्शक हौ।

आ कलशा अनूषतेन्दो धाराभिरोजसा। एन्द्रस्य पीतये विश ॥१४॥
हे सोमदेव ! तिम्रा रसका धारायुक्त कलशलाई हामी आफ्नै सामर्थ्यले स्तुति गर्दछौं। तिमी इन्द्रदेवले पान गर्नका लागि कलशमा प्रवेश गर।

यस्य ते मद्यं रसं तीव्रं दुहन्त्यद्रिभिः। स पवस्वाभिमातिहा ॥१५॥
हे सोमदेव ! तिम्रो अत्यन्त हर्षकारी वेगवान् रस मेघ वा ढुङ्गो दुहेर निकालिन्छ। त्यो शत्रुनाशक भएर आएको हुन्छ।

राजा मेधाभिरीयते पवमानो मनावधि। अन्तरिक्षेण यातवे ॥१६॥
मानसिक शक्तिका अधीनको वा यज्ञमा जाने यो पवमान सोम राजाझैं बुद्धिले गतिमान हुँदै अन्तरिक्षमा जानका लागि समर्थ छ।

आ न इन्दो शतग्विनं गवां पोषं स्वश्व्यम्। वहा भगत्तिमूतये ॥१७॥
हे सोमदेव ! तिमी सयौँ गाई र असल अश्व प्राप्ति र तिनको पोषण गर्नका लागि समर्थ सौभाग्य हामीलाई प्रदान गर।

आ नः सोम सहो जुवो रूपं न वर्चसे भर। सुष्वाणो देववीतये ॥१८॥
दैवी शक्ति पाउनका लागि शोधित हे सोमदेव ! तिमी बलवर्द्धक बनेर हामीलाई तेज बढाउने शक्ति प्रदान गर।

अर्षा सोम द्युमत्तमोऽभि द्रोणानि रोरुवत्। सीदञ्छ्येनो न योनिमा ॥१९॥
हे तेजस्वी सोमदेव ! तिमी शब्द गर्दै पात्रमा शुद्ध भएर स्थित होऊ। तिमी तपोवनमा रहेको यस यज्ञमण्डपमा आऊ।

अप्सा इन्द्राय वायवे वरुणाय मरुद्भ्यः। सोमो अर्षति विष्णवे ॥२०॥
जल मिश्रित सोमरस इन्द्र, वायु, वरुण, मरुत् र विष्णु आदि देवताको सन्तुष्टिका लागि कलशमा स्थिर होस्।

इषं तोकाय नो दधदस्मभ्यं सोम विश्वतः। आ पवस्व सहस्रिणम् ॥२१॥
हे दिव्य सोमदेव ! हाम्रा सन्तानका लागि तिमी सहस्र प्रकारका अन्न, धन आदि वैभव सबै तिरबाट ल्याएर देऊ।

ये सोमासः परावति ये अर्वावति सुन्विरे। ये वादः शर्यणावति ॥२२॥
टाढाको देशमा या नजिकको देशमा अथवा शर्यणावत सरोवरका नजिकै उत्पन्न भएर संस्कारित सोमरस हाम्रा लागि इष्टप्रदायक हुनेछ।

य आर्जीकेषु कृत्वसु ये मध्ये पस्त्यानाम्। ये वा जनेषु पञ्चसु ॥२३॥
आर्जीक देशमा, कर्म गर्नेका देशमा वा नदीका किनारमा अथवा पाँच वर्णका बीचमा उत्पन्न भएर संस्कारित सोम नै हाम्रा लागि सुखदायक हुनेछ।

ते नो वृष्टिं दिवस्परि पवन्तामा सुवीर्यम्। सुवाना देवास इन्दवः ॥२४॥
पेलेर निकालिएको, दीप्तिमान्, दिव्य सोम हामीलाई द्युलोकबाट वर्षा र उत्तम बलले युक्त पोषक अन्न प्रदान गर्दछ।

पवते हर्यतो हरिर्गृणानो जमदग्निना। हिन्वानो गोरधि त्वचि ॥२५॥
जमदग्नि ऋषिले व्यक्त र प्रस्तुत गरेको यस कान्तिमान् गतिशील सोमलाई गाईको चर्मजस्तो पृथ्वीको माथिल्लो सतहले धारण गर्नका लागि प्रेरित गरिन्छ।

प्र शुक्रासो वयोजुवो हिन्वानासो न सप्तयः। श्रीणाना अप्सु मृञ्जत ॥२६॥
पानीमा मिसिएको, अन्न प्रदान गर्ने, कान्तिमान् सोमरस गतिमान् अश्वझैं जलले पवित्र भएको छ।

तं त्वा सुतेष्वाभुवो हिन्विरे देवतातये। स पवस्वानया रुचा ॥२७॥
सोमरसलाई याजकहरू यज्ञमा देवताका लागि प्रेरित गर्दछन्। हे सोमदेव ! तिमी त्यस अनुरूप नै सुशोभित होऊ।

आ ते दक्ष मयोभुवं वह्निमद्या वृणीमहे। पान्तमा पुरुस्पृहम् ॥२८॥
हे सोमदेव ! हर्ष प्रदान गर्ने, सम्पत्ति प्रदान गर्ने, शत्रुबाट रक्षा गर्ने तिम्रा बलको अनेकौं मानिसले कामना गर्दछन्। त्यस बललाई हामी धारण गर्दछौं।

आ मन्द्रमा वरेण्यमा विप्रमा मनीषिणम्। पान्तमा पुरुस्पृहम्। २९॥
आनन्दवर्द्धक, श्रेष्ठ, ज्ञानी, विलक्षण, संरक्षक र सबैबाट प्रशंसनीय हे सोमदेव ! हामी तिम्रो उपासना गर्दछौं।

आ रयिमा सुचेतुनमा सुक्रतो तनूष्वा। पान्तमा पुरुस्पृहम् ॥३०॥
उत्तम कर्ममा लागेका हे सोमदेव ! धन, उत्तम ज्ञान, पुत्रपौत्र आदि असल सन्तान, सबल संरक्षण र प्रशंसायोग्य शक्तिको सामर्थ्य पाउन हामी तिम्रो वन्दना गर्दछौं।

[सूक्त - ६६]

ऋषि - शत वैखानस। देवता - पवमान सोम अग्नि। छन्द - गायत्री अनुष्टुप्।

पवस्व विश्वचर्षणेऽभि विश्वानि काव्या। सखा सखिभ्य ईड्यः ॥१॥
हे सर्वद्रष्टा सोमदेव ! हामी तिमीलाई सबै स्तोत्रले मित्रको जस्तै स्तुति गर्दछौं। तिमी स्तुतिले प्रसन्न भएर हामीलाई उत्तम रस प्रदान गर।

ताभ्यां विश्वस्य राजसि ये पवमान धामनी। प्रतीची सोम तस्थतुः ॥२॥
पवमान सोमले दुई धामबाट विश्वलाई प्रकाशित र नियन्त्रित गर्दछ। सोम पश्चिममा रहेको हुन्छ।

परि धामानि यानि ते त्वं सोमासि विश्वतः। पवमान ऋतुभिः कवे ॥३॥
हे पवित्र ज्ञानी सोमदेव ! सम्पूर्ण विश्वमा तिम्रो स्थान ऋतुअनुसार निर्धारित छ।

पवस्व जनयन्निषोऽभि विश्वानि वार्या। सखा सखिभ्य ऊतये ॥४॥
हे सबैका मित्र सोमदेव ! आफ्ना मित्रको संरक्षणका लागि स्वीकार गर्ने योग्य सम्पूर्ण धन र उत्तम अन्न प्रदान गर।

तव शुक्रासो अर्चयो दिवस्पृष्ठे वि तन्वते। पवित्रं सोम धामभिः ॥५॥
हे सोमदेव ! तिम्रो कान्तिमान् किरण सूर्य र भूमिका पृष्ठ भागमा आफ्नो तेजले पवित्र प्रकाश फैलाउँछ।

तवेमे सप्त सिन्धवः प्रशिषं सोम सिस्रते। तुभ्यं धावन्ति धेनवः ॥६॥
हे सोमदेव ! सातै नदी तिम्रा आज्ञाले प्रवाहित छन् र गाई कुदेर तिमीकहाँ आउँछन्।

प्र सोम याहि धारया सुत इन्द्राय मत्सरः। दधानो अक्षिति श्रवः ॥७॥
हे अक्षय अन्न धारण गर्ने सोमदेव ! इन्द्रलाई आनन्द प्रदान गर्नका लागि तिमी धाराका रूपमा उनका नजिक पुग।

समु त्वा धीभिरस्वरन्हिन्वतीः सप्त जामयः। विप्रमाजा विवस्वतः ॥८॥
हे सोमदेव ! सात याजक यज्ञकार्यमा स्तुतिद्वारा तिम्रो महिमा बढाउने गुण गाउँछन्।

मृजन्ति त्वा समग्रुवोऽव्ये जीरावधि ष्वणि। रेभो यदज्यसे वने ॥९॥
हे सोमदेव ! ऊनीले बनाएको चाल्नीबाट शब्दनाद गर्दै शोधित हुँदा हामी औंलाले तिमीलाई पवित्र बनाउँछौं। शोधित भएपछि तिमी शब्द गर्दै जलमा मिसाइन्छौ।

पवमानस्य ते कवे वाजिन्त्सर्गा असृक्षत। अर्वन्तो न श्रवस्यवः ॥१०॥
हे बलवर्द्धक सोमदेव ! शुद्ध भएका बेला तिम्रो यशस्वी धारा अश्वशालाबाट निस्कने द्रुतगामी अश्वजस्तै वेगवान् हुन्छ।

अच्छा कोशं मधुश्चुतमसृग्रं वारे अव्यये। अवावशन्त धीतयः ॥११॥
मधुर रसयुक्त कलशमा हामी सोमरस छान्दछौं। त्यसले हाम्रा औंलालाई वारम्वार शुद्ध गराउँछ।

अच्छा समुद्रमिन्दवोऽस्तं गावो न धेनवः। अग्मन्नृतस्य योनिमा ॥१२॥
जलयुक्त कलशमा छानिएको सोमरस दुधालु गाई थलामा गएझैं यज्ञस्थलमा जान्छ।

प्र ण इन्दो महे रण आपो अर्षन्ति सिन्धवः। यद् गोभिर्वासयिष्यसे ॥१३॥
हे सोमदेव ! हाम्रा महान् यज्ञमा तिम्रा रसमा मिसाउन नदीको जल ल्याइएको छ। त्यो सोमरस गाईका दुधमा मिसाइन्छ।

अस्य ते सख्ये वयमियक्षन्तस्त्वोतयः। इन्दो सखित्वमुश्मसि ॥१४॥
हे सोमदेव ! हामी तिम्रा मित्रजस्तै बनेर रहौं। तिम्रो मित्रताबाट हामी संरक्षणको कामना गर्दछौं।

आ पवस्व गविष्टये महे सोम नृचक्षसे। एन्द्रस्य जठरे विश ॥१५॥
हे दिव्यद्रष्टा सोमदेव ! तिमी गाईको रक्षा गर्ने हौ। त्यसैले इन्द्रदेवका निम्ति प्रवाहित भएर तिमी उनका पेटमा प्रवेश गर।

महाँ असि सोम ज्येष्ठ उग्राणामिन्द ओजिष्ठः। युध्वा सञ्छश्वज्जिगेथ ॥१६॥
हे सोमदेव ! तिमी महान् छौ, असल छौ, शूरहरूमा अधिक श्रेष्ठ वीर हौ। शत्रुमाथि सधैं विजय प्राप्त गर्दछौ।

य उग्रेभ्यश्चिदोजीयाञ्छूरेभ्यश्चिच्छूरतरः। भूरिदाभ्यश्चिन्मंहीयान् ॥१७॥
सोम पराक्रमीमा महापराक्रमी, शूरवीरमा महाशूरवीर र धेरै दान दिनेमा महादानी छ।

त्वं सोम सूर एषस्तोकस्य साता तनूनाम्।
वृणीमहे सख्याय वृणीमहे युज्याय ॥१८॥
हे सोमदेव ! हामीलाई पौष्टिक अन्न प्रदान गर। तिमी पुत्रपौत्र आदि प्रदान गर्दछौ। त्यसैले मित्रताको कामना गर्दै सहयोगका लागि हामी तिमीलाई स्वीकार गर्दछौं।

**अग्न आयूंषि पवस आ सुवोर्जमिषं च नः। आरे बाधस्व दुच्छुनाम् ॥१९॥**
हे अग्निदेव ! हामीलाई लामो आयु प्रदान गर, अन्न र बलले पूर्ण गर। चाकरी गर्ने आनन्दीन भएका शत्रुलाई हामीबाट टाढा लैजाऊ।

**अग्निर्ऋषिः पवमानः पाञ्चजन्यः पुरोहितः। तमीमहे महागयम् ॥२०॥**
समाजका पाँचै वर्गको हित चाहने र सबै कुरो जान्ने अग्निदेवलाई ऋत्विकहरूले यज्ञका लागि पहिले स्थापित गरे। ती समर्थ अग्निदेवलाई हामी स्तुति गर्दछौं।

**अग्ने पवस्व स्वपा अस्मे वर्चः सुवीर्यम्। दधद्रयिं मयि पोषम् ॥२१॥**
हे अग्निदेव ! तिमी उत्तम कर्मको प्रेरणा दिन्छौ। हामीलाई तेज र पराक्रमले युक्त शक्ति प्रदान गर। हामीलाई ऐश्वर्य र पोषक तत्त्वले सम्पन्न बनाऊ।

**पवमानो अति स्रिधोऽभ्यर्षति सुष्टुतिम्। सूरो न विश्वदर्शतः ॥२२॥**
शत्रु पार गर्ने सोम पर पुग्दछ। सूर्यदेवको हृदयजस्तै यो सबै कुरो देख्ने उत्तम स्तुतिले सुशोभित हुन्छ।

**स मर्मृजान आयुभिः प्रयस्वान्प्रयसे हितः। इन्दुरत्यो विचक्षणः ॥२३॥**
शोधित भएको तेजस्वी सोम देवताका निकट पुग्नका लागि यज्ञमा अर्पित गरिन्छ।

**पवमान ऋतं बृहच्छुक्रं ज्योतिरजीजनत्। कृष्णा तमांसि जङ्घनत् ॥२४॥**
पवित्रकर्ता सोम महान्, प्रखर, तेजस्वी प्रकाश प्रकट गर्दछ र कालो अज्ञानतारूपी अन्धकार विनाश गर्दछ।

**पवमानस्य जङ्घ्नतो हरेश्चन्द्रा असृक्षत। जीरा अजिरशोचिषः ॥२५॥**
शत्रुविनाशक, सर्वत्र गमनशील, तेजोमय हरियो आभासम्पन्न सोमको आनन्ददायक धारा प्रवाहित हुन्छ।

**पवमानो रथीतमः शुभ्रेभिः शुभ्रशस्तमः। हरिश्चन्द्रो मरुद्गणः ॥२६॥**
उच्च स्थानमा सुशोभित, शुभ्र तेजले कान्तिमान, हरियो आभाले युक्त सोम मरुतहरूका सहायताले पुष्ट हुँदै सबैलाई आनन्दित गराउँछ।

**पवमानो व्यश्नवद्रश्मिभिर्वाजसातमः। दधत्स्तोत्रे सुवीर्यम् ॥२७॥**
हे सोमदेव ! असङ्ख्य किसिमका अन्न र सामर्थ्य प्रदान गर्ने तिमी स्तोतालाई असल पुत्र र ऐश्वर्य प्रदान गर्दछौ।

**प्र सुवान इन्दुरक्षाः पवित्रमत्यव्ययम्। पुनान इन्दुरिन्द्रमा ॥२८॥**
पेलेर तयार सोम ऊनीको चाल्नीबाट छानिएर इन्द्रदेवतिर जान्छ।

**एष सोमो अधि त्वचि गवां क्रीळत्यद्रिभिः। इन्द्रं मदाय जोहुवत् ॥२९॥**
भूमिका पृष्ठ भागमा ढुङ्गाले सोम कुट्दा क्रीडा गर्दै आनन्द प्राप्तिका लागि इन्द्रदेवलाई सोमरसले आमन्त्रित गर्दछ।

**यस्य ते द्युम्नवत्पयः पवमानाभृतं दिवः। तेन नो मृळ जीवसे ॥३०॥**
हे सोमदेव ! दुधजस्तो तेजस्वी रस देवलोकमा सर्वत्र व्याप्त छ। त्यसैबाट तिमी दीर्घजीवन प्रदान गर्दै हामीलाई सुखी बनाऊ।

## [सूक्त - ६७]

ऋषि - भौम गाथिन भार्गव। देवता - पवमान सोम। छन्द - उष्णिक् अनुष्टुप्।

**त्वं सोमासि धारयुर्मन्द्र ओजिष्ठो अध्वरे। पवस्व मंहयद्रयिः ॥१॥**
हे परम सुखदायक, सामर्थ्यवान् सोमदेव ! उत्तम यज्ञमा आफ्नो धारा ऐश्वर्ययुक्त गर। धन र बल प्रदायक हे सोमदेव ! तिमी कलशमा शुद्ध होऊ।

**त्वं सुतो नृमादनो दधन्वान्मत्सरिन्तमः। इन्द्राय सूरिरन्धसा ॥२॥**
हे सोमदेव ! तिम्रो रस याजकभित्र बढ्दछ। यजमानलाई धन र आनन्द प्रदान गर्ने तिमी इन्द्रदेवलाई पनि आनन्दयुक्त होऊ।

**त्वं सुष्वाणो अद्रिभिरभ्यर्ष कनिक्रदत्। द्युमन्तं शुष्ममुत्तमम् ॥३॥**
हे सोम ! ढुङ्गाले कुटेर निकालिएको तिम्रो रस घोषणा गरेझैं गरी हामीलाई तेजयुक्त पौष्टिक अन्न प्रदान गरोस्।

**इन्दुर्हिन्वानो अर्षति तिरो वाराण्यव्यया। हरिर्वाजमचिक्रदत् ॥४॥**
अविनाशी शोधक यन्त्रबाट तलतिर जाँदो, हरियो आभा बढिरहेको सोमरस शब्दनाद गर्दै पात्रमा एकत्र हुन्छ।

**इन्दो व्यव्यमर्षसि वि श्रवांसि वि सौभगा। वि वाजान्त्सोम गोमतः ॥५॥**
हे सोमदेव ! तिमी अनश्वर चाल्नीले शोधित छौ। गाईले युक्त बल र हविष्यान्न ग्रहण गर्दै तिमी अनकौं किसिमका सौभाग्य प्राप्त गर्दछौ।

**आ न इन्दो शतग्विनं रयिं गोमन्तमश्विनम्। भरा सोम सहस्रिणम् ॥६॥**
हे तेजस्वी सोमदेव ! हामीलाई सयौं गाई र अनेकौं अश्वले युक्त हजारौं धन प्रदान गर।

**पवमानास इन्दवस्तिरः पवित्रमाशवः। इन्द्रं यामेभिराशत ॥७॥**
चाल्नीले शोधित हुन जाने द्रुतगामी सोमरस आफ्नो नियमअनुसार इन्द्रदेवसम्म पुग्छ।

**ककुहः सोम्यो रस इन्दुरिन्द्राय पूर्व्यः। आयुः पवत आयवे ॥८॥**
सोम नामका वनस्पतिबाट निकालिएको असल ऐश्वर्यवान् रस सर्वत्र गमनशील इन्द्रदेवका निमित्त जान्छ।

**हिन्वन्ति सूरमुस्रयः पवमानं मधुश्चुतम्। अभि गिरा समस्वरन् ॥९॥**
उत्तम, बलशाली, मधुर रस प्रदान गर्ने सोमलाई औंलाले विस्तृत गर्दछन्। याजकहरू त्यस बेला स्तुति गान गर्दछन्।

**अविता नो अजाश्वः पूषा यामनियामनि। आ भक्षत्कन्यासु नः ॥१०॥**
अज वाहन भएका पूषादेव प्रत्येक पवित्र स्थानमा हाम्रो संरक्षण गरुन्। हामीलाई तिमी मन परेका राम्रो लक्षणले युक्त कन्या प्रदान गर।

**अयं सोमः कपर्दिने घृतं न पवते मधु। आ भक्षत्कन्यासु नः ॥११॥**
उत्तम मुकुटले सजिएका पूषादेवताका लागि सोमले मधुर घिउजस्तै रस प्रदान गर्दछ। उसले हामीलाई उसल कन्या प्रदान गर्दछ।

**अयं त आघृणे सुतो घृतं न पवते शुचि। आ भक्षत्कन्यासु नः ॥१२॥**
हे तेजस्वी पूषादेव ! रस प्रदान गर्ने यस सोमले शुद्ध घिउजस्तै रस तिमीलाई दिन्छ र हामीलाई असल कन्या दिन्छ।

**वाचो जन्तुः कवीनां पवस्व सोम धारया। देवेषु रत्नधा असि ॥१३॥**
हे सोमदेव ! तिमी स्तोताको स्तुतिका प्रकाश हौ। तिमी देवतालाई रत्न आदिले पूर्ण गराउँछौ। हामीलाई तिमी धारारूपी रस प्रदान गर।

**आ कलशेषु धावति श्येनो वर्म वि गाहते। अभि द्रोणा कनिक्रदत् ॥१४॥**
श्येन पक्षी आफ्ना गुँडमा गएझैं सोमरस शब्दनाद गर्दै कलशभित्र जान्छ।

**परि प्र सोम ते रसोऽसर्जि कलशे सुतः। श्येनो न तक्तो अर्षति ॥१५॥**
श्येन पक्षी आफ्ना गुँडमा बसेझैं कलशमा स्थापित सोमरस चारैतिर सुशोभित हुन्छ।

**पवस्व सोम मन्दयन्निन्द्राय मधुमत्तमः ॥१६॥**
हे सोमदेव ! इन्द्रदेवलाई आनन्द प्रदान गर्नका लागि तिमी मधुर रस प्रदान गर।

**असृग्रन्देववीतये वाजयन्तो रथा इव ॥१७॥**
शत्रुलाई पराजित गर्ने रथझैं देवताले पान गर्नका लागि सोमरस निकालिन्छ।

**ते सुतासो मदिन्तमाः शुक्रा वायुमसृक्षत ॥१८॥**
हर्षकारक, तेजस्वी सोमरस पेलेर तयार हुँदा वायुको जस्तै शब्दनाद गर्दछ।

**ग्राव्णा तुन्नो अभिष्टुतः पवित्रं सोम गच्छसि। दधत्स्तोत्रे सुवीर्यम् ॥१९॥**
हे सोमदेव ! ढुङ्गामा कुटेर निकालेको तिम्रो रस पवित्र हुनका लागि प्रवाहित हुन्छ। यस रसले स्तोतालाई उत्तम बल प्रदान गर्दछ।

**एष तुन्नो अभिष्टुतः पवित्रमति गाहते। रक्षोहा वारमव्ययम् ॥२०॥**
स्तुत्य शोधित सोम सर्वोपरि पवित्रता प्रदान गर्दछ। राक्षसको नाश गर्ने सोमरस अविनाशी चाल्नीले छानिन्छ।

यदन्ति यच्च दूरके भयं विन्दति मामिह। पवमान वि तज्जहि॥२१॥
हे पवित्र सोम ! हाम्रा नजिकै वा टाढा व्याप्त भइरहेको डर तिमी नाश गर।

पवमानः सो अद्य नः पवित्रेण विचर्षणिः। यः पोता स पुनातु नः॥२२॥
सर्वद्रष्टा सोमले पवित्र गराउँछ। शोधित भएर त्यसले हामीलाई पनि पवित्र गराओस्।

यत्ते पवित्रमर्चिष्यग्ने विततमन्तरा। ब्रह्म तेन पुनीहि नः॥२३॥
हे अग्निदेव ! तिम्रो पवित्र गराउने तेज व्याप्त छ। त्यसले हाम्रो ज्ञान पवित्र गराओस्।

यत्ते पवित्रमर्चिवदग्ने तेन पुनीहि नः। ब्रह्मसवैः पुनीहि नः॥२४॥
हे अग्निदेव ! तिम्रो पवित्र गराउने तेज व्याप्त छ। त्यसले र ज्ञानका स्रोतले हामीलाई पवित्र गराऊन्।

उभाभ्यां देव सवितः पवित्रेण सवेन च। मां पुनीहि विश्वतः॥२५॥
हे सवितादेव ! तिमी पवित्र गराउने ज्ञान र सोम यी दुवैले हामीलाई पवित्र गराऊ।

त्रिभिष्ट्वं देव सवितर्वर्षिष्ठैः सोम धामभिः। अग्ने दक्षैः पुनीहि नः॥२६॥
हे सवितादेव, हे अग्निदेव र हे सोमदेव ! सर्वसमर्थ तीनै तेजद्वारा हामीलाई पवित्र गर।

पुनन्तु मां देवजनाः पुनन्तु वसवो धिया।
विश्वे देवाः पुनीत मा जातवेदः पुनीहि मा॥२७॥
अष्टवसु, जातवेद, दिव्यजन र सबै देवताले आआफ्ना बुद्धिले हामीलाई पवित्र गरुन्।

प्र प्यायस्व प्र स्यन्दस्व सोम विश्वेभिरंशुभिः। देवेभ्य उत्तमं हविः॥२८॥
हे सोमदेव ! देवतालाई समर्पित गर्न योग्य सबै किसिमका हविष्यान्न हामीलाई प्रदान गर्दै हाम्रो उन्नति गराऊ।

उप प्रिय पनिप्नतं युवानमाहुतीवृधम्। अगन्म बिभ्रतो नमः॥२९॥
शब्दनाद गर्ने, उपासकका प्रिय, आहुतिले बढ्ने, तरुण अग्निदेवलाई हामी नमस्कार गर्दै उनका नजिक जान्छौं।

अलाय्यस्य परशुर्ननाश तमा पवस्व देव सोम। आखुं चिदेव देव सोम॥३०॥
आक्रमणकारी शत्रुका शस्त्र नाश होऊन्। हे सोम ! आफ्नो रस प्रदान गर्दै हाम्रा शत्रु नाश गर।

यः पावमानीरध्येत्यृषिभिः सम्भृतं रसम्।
सर्वं स पूतमश्नाति स्वदितं मातरिश्वना॥३१॥
ऋषिहरूले सँगालेका जीवनसूत्रमा रस प्रदान गर्ने, पवित्र गराउने सूक्त पाठ गर्ने साधक वरुणका प्रभावले वायुदेवले सुखपूर्वक स्वीकार गरेको सबै पवित्र अन्न सेवन गर्दछन्।

पावमानीर्यो अध्येत्यृषिभिः सम्भृतं रसम्।
तस्मै सरस्वती दुहे क्षीरं सर्पिर्मधूदकम्॥३२॥
ऋषिबाट प्रणीत वेदका ऋचाको अध्ययन जसले गर्दछ, उसका लागि सरस्वतीले दुध, घिउ, मह जस्ता तत्त्वहरू उपलब्ध गराउँछिन्।

[सूक्त - ६८]

ऋषि - वत्सप्रिभलन्दन। देवता - पवमान सोम। छन्द - जगती त्रिष्टुप्।

प्र देवमच्छा मधुमन्त इन्दवोऽसिष्यन्त गाव आ न धेनवः।
बर्हिषदो वचनावन्त ऊधभिः परिस्रुतमुस्रिया निर्णिजं धिरे॥१॥
दुधालु गाईले बाछाका लागि दुध चुगाएझैं मिठो सोमरस देवतातिर प्रवाहित हुन्छ। यज्ञमण्डपमा एकत्र भएका वाणीरूपी गाई शब्द गर्दै आफ्नो सारतत्त्व प्रकट गर्दै भाग श्रवण गराउने रूपमा दोहन गर्ने काममा लागेका छन्।

स रोरुवदभि पूर्वा अचिक्रददुपारुहः श्रथयन्स्वादते हरिः।
तिरः पवित्रं परियन्नुरु ज्रयो नि शर्याणि दधते देव आ वरम्॥२॥
हरियो आभासम्पन्न सोम स्तोताको सर्वश्रेष्ठ स्तुति सुन्दै नजिकै आउनेलाई विशेष रूपले आनन्द प्रदान गर्दछ। सर्वोत्तम पवित्र बनेर अगाडि जाने सोम वेगसँग शत्रु नाश गर्दछ र शब्दनाद गर्दै दिव्यता धारण गर्दछ।

वि यो ममे यम्या संयती मदः साकंवृधा पयसा पिन्वदक्षिता।
महीं अपारे रजसी विवेविदद्भिव्रजन्नक्षितं पाज आ ददे ॥३॥

आनन्द बढाउने सोम असल नियमले बाँधिएर परस्पर सँगै रहेका, क्षीण नहुने, महान् द्यावापृथिवी चिन्दछ र तिनलाई पेय पदार्थले सिञ्चित गर्दै अगाडि बढेर अक्षय बल प्राप्त गर्दछ।

स मातरा विचरन्वाजयन्नपः प्र मेधिरः स्वधाय पिन्वते पदम्।
अंशुर्यवेन पिपिशे यतो नृभिः सं जामिभिर्नसते रक्षते शिरः ॥४॥

बुद्धिमान् सोम मातापितारूपी पृथ्वी र द्युलोकमाथि विचरण गर्दै जल प्रेरित गर्दछ। आफ्नै शक्तिले आफ्नो पद समृद्ध गराउने सोम जौं आदि अन्नले पुष्ट हुन्छ। यही सोम मानिसका शक्तिसित मिलेर बस्दछ र असल पक्षको रक्षा गर्छ।

सं दक्षेण मनसा जायते कविर्ऋतस्य गर्भो निहितो यमा परः।
यूना ह सन्ता प्रथमं वि जज्ञतुर्गुहा हितं जनिम नेममुद्यतम् ॥५॥

शक्तिशाली मनबाट यही सोम उचित किसिमले प्रकट भएर नियमअनुसारको उच्च स्थानमा रहन्छ। यज्ञको गर्भ पनि यही सोम हो। सोमका विषयमा दुई कुरा पहिले नै जानिसकिएको छ। गोप्य स्थानमा रहने यसको जन्म नियमअनुसार हुन्छ।

मन्द्रस्य रूपं विविदुर्मनीषिणः श्येनो यदन्धो अभरत्परावतः।
तं मर्जयन्त सुवृधं नदीष्वाँ उशन्तमंशुं परियन्तमृग्मियम् ॥६॥

श्येन पक्षीले टाढादेखि ल्याएका सोमरूपी अन्नको स्वरूप ज्ञानीहरूले जान्दछन्। स्तुति गर्ने योग्य सोम नदीका जलमा मिसिएर उचित रीतिले परिष्कृत र विस्तृत हुँदै देवगणका नजिक पुग्ने विचार गर्दै उनै नदीतिर जान्छ।

त्वां मृजन्ति दश योषणः सुतं सोम ऋषिभिर्मतिभिर्धीतिभिर्हितम्।
अव्यो वारेभिरुत देवहूतिभिर्नृभिर्यतो वाजमा दर्षि सातये ॥७॥

हे सोमदेव ! ऋषिले यज्ञकर्मबाट तिम्रो रस बुद्धि पुऱ्याएर यज्ञस्थलमा स्थापित गरे। हाम्रा दस औंलालाई सोमरसले पवित्र बनाउँछ। यसलाई देवताको स्तुति गर्ने याजकले ऊनीको चाल्नीले छानेर राखेका छन्। सोम दान गर्नका लागि अन्न प्रदान गर्दछ।

परिप्रयन्तं वय्यं सुषंसदं सोमं मनीषा अभ्यनूषत स्तुभः।
यो धारया मधुमाँ ऊर्मिणा दिव इयर्ति वाचं रयिषाडमर्त्यः ॥८॥

देवताले रुचाएको, सुप्रतिष्ठित, यज्ञपात्रमा स्थापित सोमरसको स्तुति मनले गरिन्छ। यस्तो बलशाली सोमरस सर्वोपरि शक्तिसँगै धाराका रूपमा द्युलोकबाट आउँछ। शत्रुको धनमाथि विजय प्राप्त गर्ने याजक यस अविनाशी सोमको स्तुति गर्दछन्।

अयं दिव इयर्ति विश्वमा रजः सोमः पुनानः कलशेषु सीदति।
अद्भिर्गोभिर्मृज्यते अद्रिभिः सुतः पुनान इन्दुर्वरिवो विदत्प्रियम् ॥९॥

सोमले द्युलोकबाट पृथ्वीमा वर्षा गराउँछ। परिष्कृत सोमरस यज्ञस्थलका कलशमा विराजमान रहन्छ। ढुङ्गाले शोधन गरिने तयारी सोमरस स्तोतालाई धन प्रदान गर्दछन्।

एवा नः सोम परिषिच्यमानो वयो दधच्चित्रतमं पवस्व।
अद्वेषे द्यावापृथिवी हुवेम देवा धत्त रयिमस्मे सुवीरम् ॥१०॥

हे सोमदेव ! जल र गाईको दुधसित मिसिएर तिमी विभिन्न किसिमका अन्न हामीलाई प्रदान गर। द्वेष नगर्ने द्युलोक र पृथ्वीलाई हामी आह्वान गर्दछौं। देवताहरूले हामीलाई शौर्यवान् सन्ततिले युक्त धन प्रदान गरुन्।

[सूक्त - ६९]

ऋषि - हिरण्यस्तूप आङ्गिरस। देवता - पवमान सोम। छन्द - जगती त्रिष्टुप्।

इषुर्न धन्वन् प्रति धीयते मतिर्वत्सो न मातुरुप सर्ज्यूधनि।
उरुधारेव दुहे अग्र आयत्यस्य व्रतेष्वपि सोम इष्यते ॥१॥

धनुषमा वाण लगाएझैं वा आमाका काखमा छोरो बसेझैं हामी इन्द्रदेवलाई स्तुति गर्दछौं। दुध दिने गाईले सबैलाई स्नेहपूर्वक दुध दिएझैं हामी असल कर्ममा श्रद्धासाथ सोमरस अर्पित गर्दछौं।

उपो मतिः पृच्यते सिच्यते मधु मन्द्राजनी चोदते अन्तरासनि।
पवमानः संतनिः प्रघ्नतामिव मधुमान्द्रप्सः परि वारमर्षति॥२॥

मधुर एवं आनन्ददायक सोमरस स्तुत्य इन्द्रदेवलाई प्रदान गरिन्छ। यजमानहरूले निकालेको सोमरस शत्रुमाथि आघात गर्ने बाणजस्तै बारम्बार परिष्कृत गरिन्छ।

अव्ये वधूयुः पवते परि त्वचि श्रथ्नीते नप्तीरदितेर्ऋतं यते।
हरिरक्रान्यजतः संयतो मदो नृम्णा शिशानो महिषो न शोभते॥३॥

वधुको खोजीमा रहेझैं सोम अनश्वर आवरणमा बग्दछ। अदितिको सन्तान यस सोमले यजमानलाई यज्ञकर्ममा प्रेरित गर्दछ। याज्ञिकलाई आनन्दित गर्दै गतिशील सोम सबैलाई पार गर्दै आफ्नो शक्ति तीक्ष्ण गरेर शूरवीरजस्तै सुशोभित हुन्छ।

उक्षा मिमाति प्रति यन्ति धेनवो देवस्य देवीरुप यन्ति निष्कृतम्।
अत्यक्रमीदर्जुनं वारमव्ययमत्कं न निक्तं परि सोमो अव्यत॥४॥

शब्द उच्चारण गर्दै प्रकाशमान सोमलाई दिव्य वाणीले स्तुति गरिन्छ। शुद्ध भएका सोमले दिव्य गुण धारण गर्दछ।

अमृक्तेन रुशता वाससा हरिरमर्त्यो निर्णिजानः परि व्यत।
दिवस्पृष्ठं बर्हणा निर्णिजे कृतोपस्तरणं चम्वोर्नभस्मयम्॥५॥

हरियो आभा भएको अविनाशी सोम, जलमा मिसेर शोधित हुन्छ। कान्तिमय, शुद्ध र तेजस्वी रूपमा सोम सर्वत्र व्याप्त छ। द्युलोकका पृष्ठभागमा रहेका सूर्यदेवलाई तेजस्वी बनाउँदै आकाश र भूमिलाई प्रकाशित गर्दछ।

सूर्यस्येव रश्मयो द्रावयित्नवो मत्सरासः प्रसुपः साकमीरते।
तन्तुं ततं परि सर्गास आशवो नेन्द्रादृते पवते धाम किं चन॥६॥

सूर्यको रश्मिझैं प्रेरणादायी, आनन्दवर्द्धक सोमधारा शोधक चाल्नीबाट खस्दै फैलन्छ। त्यो इन्द्रदेवबाहेक अरू कसैलाई प्राप्त हुँदैन।

सिन्धोरिव प्रवणे निम्न आशवो वृषच्युता मदासो गातुमाशत।
शं नो निवेशे द्विपदे चतुष्पदेऽस्मे वाजाः सोम तिष्ठन्तु कृष्टयः॥७॥

याजकहरूले निकालेको आनन्ददायी सोमरस नदीको प्रवाहझैं इन्द्रदेवका नजिक जाने इच्छा गर्दछ। हे सोमदेव ! धनधान्य र सन्तति प्रदान गर्दै मानिस र पशुलाई संरक्षण प्रदान गर।

आ नः पवस्व वसुमद्धिरण्यवदश्वावद् गोमद्यवमत्सुवीर्यम्।
यूयं हि सोम पितरो मम स्थन दिवो मूर्धानः प्रस्थिता वयस्कृतः॥८॥

हे सोमदेव ! द्युलोकका उच्च शिखरमा विराजमान तिमी हाम्रा अन्नदाता पिता हुनाले हामीलाई अश्व, गाई, उत्तम पराक्रम र सुवर्ण आदिले युक्त धनधान्य प्रदान गर।

एते सोमाः पवमानास इन्द्रं रथाइव प्र ययुः सातिमच्छ।
सुताः पवित्रमति यन्त्यव्यं हित्वी वव्रिं हरितो वृष्टिमच्छ॥९॥

शत्रुको धन हरण गर्ने रथझैं उचित किसिमले शोधिई सोमरस इन्द्रदेवकहाँ जान्छ। अविनाशी सोमरस चाल्नीबाट प्रवाहित हुँदै बुढ्यौली हटाउने शक्तिसँग बर्साउँछ।

इन्दविन्द्राय बृहते पवस्व सुमृडीको अनवद्यो रिशादाः।
भरा चन्द्राणि गृणते वसूनि देवैर्द्यावापृथिवी प्रावतं नः॥१०॥

हे सोम ! महान् इन्द्रको लागि रस प्रदान गर। तिमी उत्तम सुख प्रदायक अनिन्दनीय र शत्रुनाशक हौ। स्तोतालाई भरपूर अन्न प्रदान गर। द्यावापृथिवीले उत्तम ऐश्वर्यसहित हाम्रो रक्षा गरुन्।

## [सूक्त - ७०]

ऋषि - रेणु वैश्वामित्र। देवता - पवमान सोम। छन्द - जगती त्रिष्टुप्।

त्रिरस्मै सप्त धेनवो दुदुह्रे सत्यामाशिरं पूर्व्ये व्योमनि।
चत्वार्यन्या भुवनानि निर्णिजे चारूणि चक्रे यदृतैरवर्धत॥१॥

परम व्योमलाई एक्काईस गाईरूपी दिव्य धाराले दुधरूपी पोषण प्रदान गर्दछन्, त्यस बेला यज्ञसित सम्बन्धित यस सोमले अन्य चार सुन्दर भुवन निर्माण गर्दछ।

स भिक्षमाणो अमृतस्य चारुण उभे द्यावा काव्येना वि शश्रथे।
तेजिष्ठा अपो मंहना परि व्यत यदी देवस्य श्रवसा सदो विदुः ॥२॥

उत्तम रसको इच्छा गर्नेहरूका स्तुतिले प्रभावित दिव्य सोम द्युलोक र पृथिवी जलले परिपूर्ण गराउँछ। ऋत्विक्हरूले देवताको स्थान यज्ञका हविले सजाउँदा सोमले जललाई महिमावान् बनाइदिन्छ।

ते अस्य सन्तु केतवोऽमृत्यवोऽदाभ्यासो जनुषी उभे अनु।
येभिर्नृम्णा च देव्या च पुनत आदिद्राजानं मनना अगृभ्णत ॥३॥

अदम्य र अमरत्व प्राप्त सोमरसको किरण दुवै किसिमका प्राणीको रक्षक हो। आफ्ना सामर्थ्यले सोमले अन्नलाई देवतातिर प्रेरित गर्दछ। राजाभैँ सोमको स्तुति गरिन्छ।

स मृज्यमानो दशभिः सुकर्मभिः प्र मध्यमासु मातृषु प्रमे सचा।
व्रतानि पानो अमृतस्य चारुण उभे नृचक्षा अनु पश्यते विशौ ॥४॥

असल कर्म गर्ने दस दिशारूपी औँलाले शोधित सोमले सहयोगीजस्ता सबै लोक चिनेको छ। माताभैँ ऊ यज्ञस्थलका माझमा प्रतिष्ठित हुन्छ। सबै कुराको ज्ञान भएको सोम असल नियममा चल्दै जलको उत्तम वर्षा गराउँछ र दुवै किसिमका मानिसको निरीक्षण गर्दछ।

स मर्मृजान इन्द्रियाय धायस ओभे अन्ता रोदसी हर्षते हितः।
वृषा शुष्मेण बाधते वि दुर्मतीरादेदिशानः शर्यहेव शुरुधः ॥५॥

सबैको हेरविचार गर्ने इन्द्रदेवको सामर्थ्य बढाउने उद्देश्यले शोधित सोमरस द्युलोक र पृथिवीका मध्य भागमा स्थापित भएर हर्षित हुन्छ। शत्रुसेना मार्ने उद्देश्यले बारम्बार शत्रुलाई आह्वान गर्दै आफ्ना पराक्रमले संहार गर्दछ।

स मातरा न ददृशान उस्रियो नानददेति मरुतामिव स्वनः।
जानन्नृतं प्रथमं यत्स्वर्णरं प्रशस्तये कमवृणीत सुक्रतुः ॥६॥

द्युलोक र पृथ्वी रूपी दुवै मातालाई बारम्बार हेरेर शब्दनाद गर्ने सोम सर्वतिर डुल्दछ। गाईका बाछा वा मरुत्को जस्तै शब्दले कराउने सोम द्यावापृथिवीमा पुग्दछ। जल मानिसको सबैभन्दा हितकारी हो भन्ने जानेर स्वयं नै जलमा मिसिएको सोम स्तुति गर्ने याजकलाई प्राप्त हुन्छ।

रुवति भीमो वृषभस्तविष्यया शृङ्गे शिशानो हरिणी विचक्षणः।
आ योनिं सोमः सुकृतं नि षीदति गव्ययी त्वग्भवति निर्णिगव्ययी ॥७॥

भयङ्कर हरणकर्ताजस्तो सूक्ष्म निरीक्षण गर्ने वृषभ बल बढाउने विचारले सिङ तिखारेर डुक्रँदै असल कर्मको उत्पत्तिकेन्द्रमा स्थापित हुन्छ। त्यो निश्चित अविनाशी अन्तरिक्षको आवरणरूपी वा पृथ्वीको सतहरूपी गाईको त्वचा हो।

शुचिः पुनानस्तन्वमरेपसमव्ये हरिर्न्यधाविष्ट सानवि।
जुष्टो मित्राय वरुणाय वायवे त्रिधातु मधु क्रियते सुकर्मभिः ॥८॥

शरीर पवित्र बनाउने निष्पाप, शुद्ध, हरियो रङ्गदार तेज गतिशील सोम माथि रहेका अविनाशी चाल्नीमा अडिन्छ। याज्ञिकले मित्र, वरुण, वायु आदि देवतालाई सोमरस अर्पण गर्दछन्।

पवस्व सोम देववीतये वृषेन्द्रस्य हार्दि सोमधानमा विश।
पुरा नो बाधाद् दुरिताति पारय क्षेत्रविद्धि दिश आहा विपृच्छते ॥९॥

हे बलशाली सोमदेव ! देवताका लागि आफ्नो रस प्रदान गर। इन्द्रदेवका लागि उनका पात्रमा स्थापित होऊ र दुःख दिने पापीबाट हामीलाई जोगाऊ। बाटो चिनेकाले बटुवालाई बाटो देखाएभैँ असल कर्मका लागि हामीलाई मार्गदर्शन गराऊ।

हितो न सप्तिरभि वाजमर्षेन्द्रस्येन्दो जठरमा पवस्व।
नावा न सिन्धुमति पर्षि विद्वाञ्छूरो न युध्यन्नव नो निदः स्पः ॥१०॥

हे सोमदेव ! कलशमा स्थापित होऊ। युद्धमा जाने प्रेरक घोडाभैँ कलशभित्र पस। हे सोमदेव ! इन्द्रदेवका पेटमा गएर उनलाई सन्तुष्ट गराऊ। नाविकका नौकाले नदी तारेभैँ हामीलाई दुःखबाट पार लगाऊ। विद्वान्, शूरवीरभैँ युद्ध गर्दै हाम्रा निन्दक नाश गरेर हाम्रो रक्षा गर।

[सूक्त - ७१]

**ऋषि** - ऋषभ वैश्वामित्र। **देवता** - पवमान सोम। **छन्द** - जगती त्रिष्टुप्।

**आ दक्षिणा सृज्यते शुष्म्याऽऽसदं वेति द्रुहो रक्षसः पाति जागृविः।**
**हरिरोपशं कृणुते नभस्पय उपस्तिरे चम्वोर्ब्रह्म निर्णिजे ॥१॥**

बलवर्द्धक सोम यथास्थानमा स्थित छ। त्यो सोम जागृत रहने याजकलाई द्रोही राक्षसबाट रक्षा गर्दछ। द्युलोक र पृथिवीका माझमा त्यो सोम सूर्यदेवलाई प्रकाशित गराउँदै छ। आकाशबाट भइरहेको वर्षामा त्यो हरियो आभा भएको सोम प्रवेश गरिरहेको छ। सोमयज्ञमा दक्षिणा दिइँदै छ।

**प्र कृष्टिहेव शूष एति रोरुवदसुर्यं१ वर्णं नि रिणीते अस्य तम्।**
**जहाति वव्रिं पितुरेति निष्कृतमुपप्रुतं कृणुते निर्णिजं तना ॥२॥**

विस्तारित रूपले सोम छानिँदै परिष्कृत भएर, पिताका रूपमा प्रकट हुँदै छ। दुर्धर्ष शत्रु नाश गर्ने वीरको जस्तै शब्द गर्दै सोम आफ्ना असुर नाशक बल प्रकट गर्दछ र बुक्र्यौली पर हटाउँछ।

**अद्रिभिः सुतः पवते भगस्त्योर्वृषायते नभसा वेपते मती।**
**स मोदते नसते साधते गिरा नेनिक्ते अप्सु यजते परीमणि ॥३॥**

हातले ढुङ्गामा कुटेर निकालेको सोमरस यज्ञपात्रमा स्थापित छ। बलवान् भएर स्तुतिले आनन्दित हुँदै आकाशमा सर्वत्र गमन गर्दछ। जलमा मिसिएको शोधित सोमरस पात्रमा एकत्र भएर स्तुति गर्दाखेरि मनको रहर पूरा गराउँदै यज्ञमा प्रतिष्ठित हुन्छ।

**परि द्युक्षं सहसः पर्वतावृधं मध्वः सिञ्चन्ति हर्म्यस्य सक्षणिम्।**
**आ यस्मिन् गावः सुहुताद ऊधनि मूर्धञ्छ्रीणन्त्यग्रियं वरीमभिः ॥४॥**

बलशाली सोमरसले द्युलोकका उच्च शिखरमा रहेर शत्रुको सहर ध्वंस गर्ने इन्द्रलाई सन्तुष्ट गराउँछ। हविष्यात्र सेवन गर्ने गाई उत्तम गुणसम्पन्न दुध इन्द्रलाई दिन्छन्।

**समी रथं न भुरिजोरहेषत दश स्वसारो अदितेरुपस्थ आ।**
**जिगादुप ज्रयति गोरपीच्यं पदं यदस्य मतुथा अजीजनन् ॥५॥**

रथलाई प्रेरित गरेझैं दुवै पाखुराका दसै औंलाले सोमलाई यज्ञस्थलतिर प्रेरित गर्दछन्। स्तोताका स्तुतिले प्रकट भएको सोमरस गाईका दुधमा मिसिँदै भाँडामा जम्मा हुन्छ।

**श्येनो न योनिं सदनं धिया कृतं हिरण्ययमासदं देव एषति।**
**ए रिणन्ति बर्हिषि प्रियं गिराश्वो न देवाँ अप्येति यज्ञियः ॥६॥**

स्तोताले स्तुति गर्दा श्येनपक्षी गुँडमा गएझैं तेजस्वी सोम सुवर्णमय आसनमा स्थापित हुन्छ। देवताका छेउमा अश्व गएझैं स्तोताका स्तुतिले प्रिय सोम यज्ञस्थलमा जान्छ।

**परा व्यक्तो अरुषो दिवः कविर्वृषा त्रिपृष्ठो अनविष्ट गा अभि।**
**सहस्रणीतिर्यतिः परायती रेभो न पूर्वीरुषसो वि राजति ॥७॥**

तेजस्वी ज्ञानवान् सोम आकाशका सूर्यदेवजस्तै टाढासम्म स्पष्ट रूपले देखिन्छ। तीनै लोकमा व्याप्त बलशाली सोम गाईको दुध वा वाणीमा मिसिन्छ। हजारौं आँखा हुने, यज्ञपात्रमा एकत्र हुने, स्तोताको जस्तै शब्द गर्ने सोमरस विशेष रूपले उषा कालभन्दा पहिले नै प्रकट हुन्छ।

**त्वेषं रूपं कृणुते वर्णो अस्य स यत्राशयत्समृता सेधति स्रिधः।**
**अप्सा याति स्वधया दैव्यं जनं सं सुष्टुती नसते सं गोअग्रया ॥८॥**

किरणले सोमरसलाई तेजस्वी रूप प्रदान गर्दछ। किरणका स्रोतमा रहेर सोमले शत्रु विनाश गर्दछ। सोम जलमा मिसिएर हविका रूपमा देवतालाई प्राप्त हुन्छ। यसको उत्तम स्तुति गरिन्छ। यो सोम गाई, हव्य वा किरणका अगाडि रहेको हुन्छ।

**उक्षेव यूथा परियन्नरावीदधि त्विषीरधित सूर्यस्य।**
**दिव्यः सुपर्णोऽव चक्षत क्षां सोमः परि क्रतुना पश्यते जाः ॥९॥**

चारैतिर गाईको बथान देखेपछि मात्तिएको साँढे डुक्रिएझैं द्युलोकमा उत्पन्न भएको सोम पृथिवीलाई हेर्दै चारैतिर सूर्यदेवको जस्तै तेज विस्तार गर्दछ। सोमले यज्ञस्थलमा याजकको निरीक्षण गर्दछ।

[सूक्त - ७२]

ऋषि - हरिमन्त आङ्गिरस। देवता - पवमान सोम। छन्द - जगती।

हरिं मृजन्त्यरुषो न युज्यते सं धेनुभिः कलशे सोमो अज्यते।
उद्वाचमीरयति हिन्वते मती पुरुष्टुतस्य कति चित्परिप्रियः ॥१॥

हरियो आभासम्पन्न सोम शोधित हुँदै छ। तेजस्वी सोम गाईका दुधमा मिसिएर कलश वा विश्वमण्डलमा स्थापित हुँदा शब्दनाद गर्दछ र त्यसै बेला त्यसको स्तुति गरिन्छ। स्तुत्य सोम याज्ञिकलाई मन पर्ने खालका कैयौं धन प्रदान गर्दछ।

साकं वदन्ति बहवो मनीषिण इन्द्रस्य सोमं जठरे यदादुहः।
यदी मृजन्ति सुगभस्तयो नरः सनीडाभिर्दशभिः काम्यं मधु ॥२॥

इन्द्रदेवको सन्तुष्टिका लागि पवित्र हात या पुरुषार्थयुक्त नेताले दस औंला वा दस दिशाबाट सोम निकाल्छन्। त्यस मधुर रसलाई शोधित गरिन्छ र ऋषिले एकै चोटि मन्त्र उच्चारण गर्दछन्।

अरममाणो अत्येति गा अभि सूर्यस्य प्रियं दुहितुस्तिरो रवम्।
अन्वस्मै जोषमभरद्विनंगृसः सं द्वयीभिः स्वसृभिः क्षेति जामिभिः ॥३॥

सोम अरूतिर नअल्मलिईकन गाईका दुधमा जान्छ। उषा कालमा सोमले अन्य शब्द हटाउँछ। स्तोताहरू यसै सोमका लागि स्तोत्र उच्चारण गर्दछन्। दुवै हातका औंलाले यो सोम मिलाइन्छ।

नृधूतो अद्रिषुतो बर्हिषि प्रियः पतिर्गवां प्रदिव इन्दुर्ऋत्वियः।
पुरन्धिवान्मनुषो यज्ञसाधनः शुचिर्धिया पवते सोम इन्द्र ते ॥४॥

हे इन्द्रदेव ! यज्ञीय कार्यमा उपयोगी र मानिसका लागि यज्ञको साधनजस्तो यो सोम प्रिय यज्ञस्थलमा तिम्रै निम्ति शोधित हुन्छ। ढुङ्गाले पेलेर निकालेको, याजकले शोधन गरेको गाईका दुधमा मिसाएको सोमरस अनादि कालदेखि नै देवताको प्रिय छ।

नृबाहुभ्यां चोदितो धारया सुतोऽनुष्वधं पवते सोम इन्द्र ते।
आप्राः क्रतून्त्समजैरध्वरे मतीर्वेर्न द्रुषच्चम्वोरासदद्धरिः ॥५॥

रुखमा चरो बसेझैं हरियो आभासम्पन्न सोम कलश वा अन्तरिक्षमा रहन्छ। हे इन्द्रदेव ! धाराका रूपमा रस प्रदान गर्ने सोमरस तिम्रो बल बढाउनका लागि याजकका पाखुराले प्रेरित भएर यज्ञस्थलमा शोधित हुन्छ। हिंसाविहीन सोमयज्ञमा सोमरस पान गरेर तिमी अभिमानी शत्रुमाथि विजय प्राप्त गर्दछौ।

अंशुं दुहन्ति स्तनयन्तमक्षितं कविं कवयोऽपसो मनीषिणः।
समी गावो मतयो यन्ति संयत ऋतस्य योना सदने पुनर्भुवः ॥६॥

बुद्धिमान, दुरदर्शी, कर्मकुशल, याजकले ननासिने, शब्दनाद गर्ने, ज्ञानवर्द्धक सोमरस निकाल्छन्। बारम्बार ब्याउने गाई वा वाणीले उत्तम बुद्धियुक्त हुँदै यज्ञ प्रकट गर्छन्।

नाभा पृथिव्या धरुणो महो दिवोऽपामूर्मौ सिन्धुष्वन्तरुक्षितः।
इन्द्रस्य वज्रो वृषभो विभूवसुः सोमो हृदे पवते चारु मत्सरः ॥७॥

विशाल द्युलोक धारण गर्ने, पृथ्वीका उच्च शिखरमा स्थित नदीका जलमा मिसिएको, इन्द्रदेवको वज्रजस्तै बलियो, ऐश्वर्यले युक्त उत्तम आनन्ददायी सोम मनलाई हर्षित गराउनका लागि रस प्रदान गर्दछ।

स तू पवस्व परि पार्थिवं रजः स्तोत्रे शिक्षन्नाधून्वते च सुक्रतो।
मा नो निर्भाग्वसुनः सादनस्पृशो रयिं पिशङ्गं बहुलं वसीमहि ॥८॥

हे श्रेष्ठकर्मा सोमदेव ! पृथ्वीलाई हेर्दै आफ्नो रस प्रदान गर। स्तोतालाई धनधान्यले पूर्ण गराऊ। हामीलाई मनग्गे साधन प्रदान गर। हामी विभिन्न खालका स्वर्ण आदि धनले सधैं युक्त रहौं।

आ तू न इन्दो शतदात्वश्व्यं सहस्रदातु पशुमद्धिरण्यवत्।
उप मास्व बृहती रेवतीरिषोऽधि स्तोत्रस्य पवमान नो गहि ॥९॥

हे सोमदेव ! हामीलाई सयौं किसिमका सुख प्रदान गर्ने, अश्वले युक्त, हजारौं दान गर्न योग्य ऐश्वर्य तुरुन्तै प्रदान गर। हे सोमदेव ! तिम्रो हाम्रो स्तोत्र सुन्न आऊ। हामीलाई पशुले युक्त र सुवर्णयुक्त महान् धनधान्य प्रदान गर।

[सूक्त - ७३]

ऋषि - पवित्र आङ्गिरस। देवता - पवमान सोम। छन्द - जगती।

स्रक्वे द्रप्सस्य धमतः समस्वरन्नृतस्य योना समरन्त नाभयः।
त्रीन्त्स मूर्ध्नो असुरश्चक्र आरभे सत्यस्य नावः सुकृतमपीपरन् ॥१॥

धारण गर्ने ठाउँका निश्चित उत्पत्ति स्थलबाट शब्द गर्दै सोमरस प्रकट हुन्छ। बलशाली केन्द्रमा संयुक्त भएर उच्च स्तरीय तीनबाट कार्य आरम्भ गर्दछ। सत्यको नौकाले सोमदेवलाई असल कार्यका निमित्त सहायता गर्दछ।

सम्यक् सम्यञ्चो महिषा अहेषत सिन्धोरूर्माावधि वेना अवीविपन्।
मधोर्धाराभिर्जनयन्तो अर्कमित्प्रियामिन्द्रस्य तन्वमवीवृधन् ॥२॥

महान् याजकहरू सङ्गठित भएर जलका तरङ्गमा सोमरस मिसाउँछन्। उनीहरू स्तोत्र अथवा प्रेरणाद्वारा इन्द्रदेवको प्रिय धामलाई सोमका धाराले परिपुष्ट गर्दछन्।

पवित्रवन्तः परि वाचमासते पितैषां प्रत्नो अभि रक्षति व्रतम्।
महः समुद्रं वरुणस्तिरो दधे धीरा इच्छेकुर्धरुणेष्वारभम् ॥३॥

सामर्थ्ययुक्त पवित्र सोमको स्तुति गरिन्छ। आद्य पिताजस्ता सोमदेव आफ्नो नियम पालन गर्दै महान् अन्तरिक्षमा तेजले छर्दछन्। ज्ञानी याजकले उनलाई धारणशील जलमा मिसाउँछन्।

सहस्रधारेऽव ते समस्वरन्दिवो नाके मधुजिह्वा असश्चतः।
अस्य स्पशो न नि मिषन्ति भूर्णयः पदेपदे पाशिनः सन्ति सेतवः ॥४॥

अन्तरिक्षबाट हजारौं जलधारायुक्त सोमको रश्मि पृथ्वीमा आउँछ। मधुरतायुक्त सोमको रश्मि द्युलोकभन्दा माथि रहन्छ। सोमका रश्मिले प्रत्येक ठाउँमा दुष्टलाई दुःख दिन्छ।

पितुर्मातुरध्या ये समस्वरन्नृचा शोचन्तः संदहन्तो अव्रतान्।
इन्द्रद्विष्टामप धमन्ति मायया त्वचमसिक्नीं भूमनो दिवस्परि ॥५॥

द्युलोक र पृथिवीमा उत्पन्न हुने सोमको किरण स्तोताका स्तुतिले प्रकाशित हुन्छ। यसले कुकर्म पूर्ण नष्ट गराउँछन्। इन्द्रदेवको द्वेष गर्ने राक्षसलाई यस किरणले पृथ्वी र आकाशभन्दा ज्यादै पर पुऱ्याउँछ।

प्रत्नान्मानादध्या ये समस्वरञ्छ्लोकयन्त्रासो रभसस्य मन्तवः।
अपानक्षासो बधिरा अहासत ऋतस्य पन्थां न तरन्ति दुष्कृतः ॥६॥

वेगशाली गति भएको स्तुत्य सोमको किरण सर्वप्रथम अन्तरिक्षबाट प्रवाहित हुन्छ। यस किरणलाई दृष्टिविहीन र बहिराले देख्न पाउँदैनन्। त्यस्ता व्यक्तिले सोमको यो किरण पाउन सक्दैनन्।

सहस्रधारे वितते पवित्र आ वाचं पुनन्ति कवयो मनीषिणः।
रुद्रास एषमिषिरासो अद्रुहः स्पशः स्वञ्चः सुदृशो नृचक्षसः ॥७॥

हजारौं धाराले तलतिर ओइरिने सोमरस शोधित गर्दाखेरि ज्ञानीजनले स्तोत्रद्वारा स्तुति गर्दै पवित्र बनाउँछन्। रुद्रका पुत्र मरुत्जस्तै स्तुत्य, द्रोहरहित, सुन्दर, सबै कुराको ज्ञान भएको, असल कर्म गर्ने र शत्रुमाथि उचित आक्रमण गर्ने यही सोम हो।

ऋतस्य गोपा न दभाय सुक्रतुस्त्री ष पवित्रा हृद्यन्तरा दधे।
विद्वान्त्स विश्वा भुवनाभि पश्यत्यवाजुष्टान्विध्यति कर्ते अव्रतान् ॥८॥

श्रेष्ठकर्मा, यज्ञरक्षक सोमले कुनै पनि ज्ञानीलाई दुःख दिँदैन। सोमले अग्नि, वायु र सूर्यको तेज धारण गर्दछ। सबै भुवनलाई सूक्ष्म दृष्टिले हेर्दै नियम पालन नगर्ने दुष्टलाई दुःख दिन्छ।

ऋतस्य तन्तुर्विततः पवित्र आ जिह्वाया अग्रे वरुणस्य मायया।
धीराश्चित्तत्समिनक्षन्त आशतात्रा कर्तमव पदात्यप्रभुः ॥९॥

सोमले यज्ञ र पवित्रताको विस्तार गर्दछ। आफ्ना शक्तिले वरुणका अग्रभागमा रहन्छ। ज्ञानीले उसलाई प्राप्त गरेर उपयोग गर्दछन्। कर्महीन व्यक्ति पतनका खाल्डामा पर्छन्।

## [सूक्त - ७४]

ऋषि – कक्षीवान् दैर्घतमस। देवता – पवमान सोम। छन्द – जगती त्रिष्टुप्।

**शिशुर्न जातोऽव चक्रदद्वने स्व१र्यद्वाज्यरुषः सिषासति।**
**दिवो रेतसा सचते पयोवृधा तमीमहे सुमती शर्म सप्रथः ॥१॥**

अन्तरिक्षमा सोमप्रवाह नवजात शिशुजस्तै शब्द गर्दछ। तेजस्वी सोम दिव्य ओज र दुध या जलमा मिसिएर बढ्छ। अश्वजस्तै स्वर्गतिर जाने मन गर्दछ। असल बुद्धि हुनेले सुन्दर स्तुतिले शुभ आवास र ऐश्वर्यसहित सोमको कामना गर्दछन्।

**दिवो यः स्कम्भो धरुणः स्वातत आपूर्णो अंशुः पर्येति विश्वतः।**
**सेमे मही रोदसी यक्षदावृता समीचीने दाधार समिषः कविः ॥२॥**

सोम खम्बाजस्तो भई द्युलोकलाई अड्याउँदै संसारलाई धारण गर्छ। यो सर्वत्र फैलिएको र सबैतिर पूर्ण रहेर सम्पूर्ण विश्वमा व्याप्त छ। सोमले द्युलोक र पृथिवीमा अन्न, जल र शक्ति विस्तार गर्दछ। यो ज्ञानी सोम द्युलोक र पृथिवीलाई संयुक्त रूपले धारण गर्दै सबै किसिमका अन्न धारण गर्दछ।

**महि प्सरः सुकृतं सोम्यं मधूर्वी गव्यूतिरदितेर्ऋतं यते।**
**ईशे यो वृष्टेरित उस्रियो वृषापां नेता य इतऊतिर्ऋग्मियः ॥३॥**

यज्ञसम्बन्धी महान् कार्यमा प्रयुक्त सोमरस यज्ञमा जाने इन्द्रदेवलाई पान गर्नका लागि उत्तम हुन्छ। वर्षाका स्वामी इन्द्रदेवका लागि पृथिवीले मार्ग विस्तृत गराउँछ। उनी गाईका हितकारी, जल वर्साउने र सबैका नेता हुन्। उनै इन्द्रदेव सोमयज्ञमा सम्मिलित भएर प्रशंसनीय हुन्छन्।

**आत्मन्वन्नभो दुह्यते घृतं पय ऋतस्य नाभिरमृतं वि जायते।**
**समीचीनाः सुदानवः प्रीणन्ति तं नरो हितमव मेहन्ति पेरवः ॥४॥**

आकाशबाट घिउ र दुधजस्तै महत्त्वपूर्ण सार वस्तु दोहन गरिन्छ। सत्का केन्द्रबाट अमृतरूपी सोम उत्पन्न हुन्छ। सँगै बसेर त्यस अमृतलाई सबैले प्रसन्न गर्दछन्। त्यस रक्षक नेताले हितकारी पदार्थको वर्षा गराउँछ।

**अरावीदंशुः सचमान ऊर्मिणा देवाव्यं१ मनुषे पिन्वति त्वचम्।**
**दधाति गर्भमदितेरुपस्थ आ येन तोकं च तनयं च धामहे ॥५॥**

देवताको रक्षा र मानवको हितका लागि सोम आफैँले आफूलाई अर्पण गरी जलमा मिसाएर शब्दनाद गर्दछ। पृथ्वीका माथिल्लो सतहमा सोमले आफ्नो गर्भ स्थापित गर्दछ, त्यसैबाट हामी आफ्ना सन्तानलाई निरोगी बनाएर रक्षा गर्नमा समर्थ हुन्छौं।

**सहस्रधारेऽव ता असश्चतस्तृतीये सन्तु रजसि प्रजावतीः।**
**चतस्रो नाभो निहिता अवो दिवो हविर्भरन्त्यमृतं घृतश्चुतः ॥६॥**

तेस्रो मानिएको स्वर्गलोकमा छुट्टिएर रहने यो सोमरस सहस्र धाराका रूपमा पृथिवीमा बगेर प्रजाको सहायक हुन्छ। द्युलोकबाट सोमका चार प्रवाह बग्ने गर्दछन्। घिउ प्रदान गर्ने सोमरस रक्षणशक्तिले युक्त छ र अमरता प्रदान गर्ने हविष्यान्नको रूप हो।

**श्वेतं रूपं कृणुते यत्सिषासति सोमो मीढ्वाँ असुरो वेद भूमनः।**
**धिया शमी सचते सेमभि प्रवद्दिवस्कवन्धमव दर्षदुद्रिणम् ॥७॥**

स्वर्गको कामनाले सोमरस यज्ञमा प्रतिष्ठित भएका बेला सेतो रङ्गको देखिन्छ। यस्तो बलशाली सोम याजकको कामना पूरा गर्दै अनेकौं किसिमका धन प्रदान गर्दछ। यो सोम बुद्धिपूर्वक गरिएका असल कर्म पूरा गराउँदै जल प्रदान गर्ने बादललाई बर्सनका लागि तलतिर पठाउँछ।

**अध श्वेतं कलशं गोभिरक्तं कार्ष्मन्ना वाज्यक्रमीत्ससवान्।**
**आ हिन्विरे मनसा देवयन्तः कक्षीवते शतहिमाय गोनाम् ॥८॥**

युद्धमा जाने घोडाझैँ यो सोमरस गाईको दुधमा मिसिएर सेतो वर्णको भई कलशमा उपयुक्त स्थानमा स्थापित हुन्छ। सयौं किसिमका स्तुति गर्दा कक्षीवान् ऋषिले गाई प्रदान गरेझैँ देवत्व प्राप्त गर्ने याजक मनैदेखि उचित विधिले सोमदेवको स्तुति गर्छन्।

**अद्भिः सोम पपृचानस्य ते रसोऽव्यो वारं वि पवमान धावति।**
**स मृज्यमानः कविभिर्मदिन्तम स्वदस्वेन्द्राय पवमान पीतये ॥९॥**

हे आनन्ददायी शोधित सोमदेव ! जलमा मिसिने तिम्रो रस ऊनीका चाल्नीले छानिन्छ। हे सोमदेव ! याजकहरूबाट परिष्कृत रस इन्द्रदेवलाई पान गर्नका लागि प्रदान गर।

## [सूक्त - ७५]

ऋषि - कवि भार्गव। देवता - पवमान सोम। छन्द - जगती।

**अभि प्रियाणि पवते चनोहितो नामानि यह्वो अधि येषु वर्धते।**
**आ सूर्यस्य बृहतो बृहन्नधि रथं विष्वञ्चमरुहद्विचक्षणः ॥१॥**

दिव्य सोम सर्वत्रगामी सूर्यदेवका रथमा आरूढ भएर संसारको द्रष्टा बन्दछ। प्रिय जलसँगै अन्नका लागि हितकारी बनेर विस्तृत हुँदै प्रवाहित हुन्छ।

**ऋतस्य जिह्वा पवते मधु प्रियं वक्ता पतिर्धियो अस्या अदाभ्यः।**
**दधाति पुत्रः पित्रोरपीच्यं१ नाम तृतीयमधि रोचने दिवः ॥२॥**

ऋतको जिब्रोजस्ता सोमले मधुर एवं प्रिय प्रवाह प्रदान गर्दछ। बोल्ने र अदम्य बुद्धि भएको सोम पुत्र वा पिताका लागि अज्ञात भएर तेस्रो नामले द्युलोकमा प्रकट हुन्छ।

**अव द्युतानः कलशाँ अचिक्रदन्नृभिर्येमानः कोश आ हिरण्यये।**
**अभीमृतस्य दोहना अनूषताधि त्रिपृष्ठ उषसो वि राजति ॥३॥**

स्वर्ण कलशमा शोधित हुँदा शब्द गर्ने तेजस्वी सोमको ऋत्विक्हरूबाट स्तुति गरिन्छ। यो सोम तीनै सन्ध्यामा प्रकट हुन्छ।

**अद्रिभिः सुतो मतिभिश्चनोहितः प्ररोचयन्रोदसी मातरा शुचिः।**
**रोमाण्यव्या समया वि धावति मधोर्धारा पिन्वमाना दिवेदिवे ॥४॥**

विद्वान्हरूले ढुङ्गामा कुटेर निकालेको परिष्कृत सोमरस अन्नका रूपमा राखे। यस सोमरसले द्यावापृथिवीरूपी मातालाई तेजस्वी बनाउँछ। सोमले प्रतिदिन मधुर धारा पवित्र बनाउँछ।

**परि सोम प्र धन्वा स्वस्तये नृभिः पुनानो अभि वासयाशिरम्।**
**ये ते मदा आहनसो विहायसस्तेभिरिन्द्रं चोदय दातवे मघम् ॥५॥**

हे सोमदेव ! तिमी हाम्रा नजिकै आएर कल्याण गर। याज्ञिकहरूले परिष्कृत गरेपछि दुधमा मिसिएर बस। तिम्रो आनन्ददायी रस महान् शक्तिसम्पन्न र शत्रुनाशक छ। तिमी यिनै शक्तिका साथ धन प्रदान गर्नका लागि इन्द्रदेवलाई प्रेरित गर।

## [सूक्त - ७६]

ऋषि - कवि भार्गव। देवता - पवमान सोम। छन्द - जगती।

**धर्ता दिवः पवते कृत्व्यो रसो दक्षो देवानामनुमाद्यो नृभिः।**
**हरिः सृजानो अत्यो न सत्वभिर्वृथा पाजांसि कृणुते नदीष्वा ॥१॥**

धारक शक्तिसम्पन्न, कर्मनिष्ठ, देवशक्ति संवर्द्धक, स्तोताबाट प्रशंसित, हरित सोम शोधित हुन्छ। यस्तो सोमरस बलवान् अश्वजस्तै सहजतासाथ आफैं नदीमा मिसिन्छ।

**शूरो न धत्त आयुधा गभस्त्योः स्वः सिषासन्रथिरो गविष्टिषु।**
**इन्द्रस्य शुष्ममीरयन्नपस्युभिरिन्दुर्हिन्वानो अज्यते मनीषिभिः ॥२॥**

हातमा शस्त्र लिएका, सरमाको जस्तै रथमा चढेका, गाईको रक्षा गर्ने, वीर र इन्द्रदेवको बल बढाउँदै यो दिव्य सोम ऋत्विक्हरूबाट प्रेरित भएर गाईको दुधसित मिसिन्छ।

**इन्द्रस्य सोम पवमान ऊर्मिणा तविष्यमाणो जठरेष्वा विश।**
**प्र णः पिन्व विद्युदभ्रेव रोदसी धिया न वाजाँ उप मासि शश्वतः ॥३॥**

हे संस्कारित सोमदेव ! महान् सामर्थ्यवान् बनेर इन्द्रदेवका पेटमा पस। मेघलाई वर्सन प्रेरित गर्ने विद्युत्झैं तिमी आकाश र पृथ्वीलाई फलदायी बनाऊ। गरेका कर्मका माध्यमबाट हाम्रा लागि अक्षय र पोषणयुक्त अन्न प्रदान गर।

**विश्वस्य राजा पवते स्वर्दृश ऋतस्य धीतिमृषिषाळवीवशत्।**
**यः सूर्यस्यासिरेण मृज्यते पिता मतीनामसमष्टकाव्यः ॥४॥**

सोम सम्पूर्ण विश्वको राजा हो। ऋषिबाट स्तुत्य सोम सर्वद्रष्टा इन्द्रदेवका कर्म प्रशंसित गर्दछ। सबै किसिमले प्रशंसनीय सोम स्तुतिको संरक्षक हो। यसलाई सूर्यका किरणले शोधित गर्दछन्।

**वृषेव यूथा परि कोशमर्षस्यपामुपस्थे वृषभः कनिक्रदत्।**
**स इन्द्राय पवसे मत्सरिन्तमो यथा जेषाम समिथे त्वोतयः ॥५॥**

बथानमा साँढे पसेझैं सोमरस कलश पात्रमा जान्छ। इन्द्रदेवका लागि शोधित सोम अत्यन्त आनन्ददायी छ। हे सोम तिम्रा संरक्षणले हामी सङ्ग्राममा विजय प्राप्त गरौं।

[सूक्त - ७७]

**ऋषि** - कवि भार्गव। **देवता** - पवमान सोम। **छन्द** - जगती।

**एष प्र कोशे मधुमाँ अचिक्रददिन्द्रस्य वज्रो वपुषो वपुष्टरः।**

**अभीमृतस्य सुदुघा घृतश्चुतो वाश्रा अर्षन्ति पयसेव धेनवः ॥१॥**

दुधालु गाईको घिउसहितको दुधजस्तै ध्वनि गर्दै, इन्द्रदेवको वज्रजस्तै शक्तिशाली, सुन्दरतम बीज अङ्कुरित गराउने सोम, शब्द गर्दै कलशमा प्रवेश गर्दछ।

**स पूर्व्यः पवते यं दिवस्परि श्येनो मथायदिषितस्तिरो रजः।**

**स मध्व आ युवते वेविजान इत्कृशानोरस्तुर्मनसाह बिभ्युषा ॥२॥**

सोम आदि कालदेखि शुद्ध छ। द्युलोकबाट प्रेरित श्येन पक्षीद्वारा समस्त बाधा पार गरेर सोम पृथ्वीमा ल्याइएको हो। रजोलोकबाट प्राप्त सोम मधुरताले युक्त भएर दुधसित मिसिन्छ। भयभीत मनले कार्य गर्ने मानिसझैं यो सोम यज्ञमा रहन्छ।

**ते नः पूर्वास उपरास इन्दवो महे वाजाय धन्वन्तु गोमते।**

**ईक्षेण्यासो अह्यो३न चारवो ब्रह्मब्रह्म ये जुजुषुर्हविर्हविः ॥३॥**

सबैभन्दा माथिल्लो स्थानमा रहेको, पहिले नै लक्ष्यमा पुगेको महान् सोमरस गाईका दुधले युक्त अन्न हामीलाई प्रदान गरोस्। यस्तो हव्य सेवन गर्ने सोमरस सबै किसिमका स्तुतिले दर्शनीय र रमणीय हुन्छ।

**अयं नो विद्वान्वनवद्वनुष्यत इन्दुः सत्राचा मनसा पुरुष्टुतः।**

**इनस्य यः सदने गर्भमादधे गवामुरुब्जमभ्यर्षति व्रजम् ॥४॥**

सोमले हानी गर्ने शत्रु चिनेर संहार गरोस्। यज्ञका अग्निमा, औषधिका गर्भमा, गाईका दुधमा र जलमा मिसिएर रहने सोमलाई सत्य मनले सङ्गठित रूपले स्तुति गरिन्छ।

**चक्रिर्दिवः पवते कृत्व्यो रसो महाँ अदब्धो वरुणो हुरुग्यते।**

**असावि मित्रो वृजनेषु यज्ञियोऽत्यो न यूथे वृषयुः कनिक्रदत् ॥५॥**

सृष्टिकर्ता, कर्मकुशल, रसरूपी सोम महान् छ। दुष्टको संहार गर्ने अविनाशी सोमलाई प्रयत्नपूर्वक निकाल्ने गरिन्छ। शत्रुबाट आक्रमण हुँदा समूहको फुर्तिलो घोडाझैं यज्ञको मुख्य साधन सोम शब्दनाद गर्दै हाम्रो रक्षा गर्दछ।

[सूक्त - ७८]

**ऋषि** - कवि भार्गव। **देवता** - पवमान सोम। **छन्द** - जगती।

**प्र राजा वाचं जनयन्नसिष्यददपो वसानो अभि गा इयक्षति।**

**गृभ्णाति रिप्रमविरस्य तान्वा शुद्धो देवानामुप याति निष्कृतम् ॥१॥**

राजा सोम शब्दनाद गर्दै जलमा मिश्रित भएर स्तुति स्वीकार गरेर रस प्रदान गर्दछ। यो सोम भेडाका रौंले निर्मित चालनीले छानिएर देवताकहाँ जान्छ।

**इन्द्राय सोम परि षिच्यसे नृभिर्नृचक्षा ऊर्मिः कविरज्यसे वने।**

**पूर्वीर्हि ते स्रुतयः सन्ति यातवे सहस्रमश्वा हरयश्चमूषदः ॥२॥**

हे सोमदेव ! यज्ञकर्ताले इन्द्रदेवका लागि तिम्रो रस निकाल्छन्। त्यो रस याजकले जलमा मिसाउँछन्। उहिलेदेखि नै तिमी यज्ञको हव्यका रूपमा प्रसिद्ध छौ। तिमी चुहुनका लागि हजारौं प्वालहरू छन् र अश्वरूपी सूर्यका झैं हजारौं किरण छन्।

**समुद्रिया अप्सरसो मनीषिणमासीना अन्तरभि सोममक्षरन्।**

**ता ईं हिन्वन्ति हर्म्यस्य सक्षणिं याचन्ते सुम्नं पवमानमक्षितम् ॥३॥**

महान् आकाशमा विद्यमान सोम जलमा मिसिन लागेको छ। यज्ञस्थलका नजिकै जान जलले सोमलाई प्रेरित गर्दछ। पवित्र सोमसित याजकहरू सुख माग्दछन्।

**गोजिन्नः सोमो रथजिद्धिरण्यजित्स्वर्जिदब्जित्पवते सहस्रजित्।**

**यं देवासश्चक्रिरे पीतये मदं स्वादिष्ठं द्रप्समरुणं मयोभुवम् ॥४॥**

हाम्रा लागि गाई, रथ, सुवर्ण, जल र हजारौं खालका धन जित्ने सोमरस शोधित हुन्छ। अरुण आभा भएको मधुर रसरूपी सोम देवतालाई आनन्द बढाउनका लागि र सुख वृद्धिका लागि बनेको हो।

एतानि सोम पवमानो अस्मयुः सत्यानि कृण्वन्द्रविणान्यर्षसि।
जहि शत्रुमन्तिके दूरके च य उर्वीं गव्यूतिमभयं च नस्कृधि ॥५॥
हे सोमदेव ! सत्यको मार्गमा चल्नेलाई सहायता गर्ने तिमी शोधित भएर धन प्रदान गर्दै आगाडि जाऊ। नजिकै या टाढा रहेका शत्रु पराजित गरेर हाम्रो रक्षा गर्दै विस्तृत मार्गमा निर्भय प्रदान गर।

[सूक्त - ७९]

**ऋषि** - कवि भार्गव। **देवता** - पवमान सोम। **छन्द** - जगती।

अचोदसो नो धन्वन्त्विन्दवः प्र सुवानासो बृहद्दिवेषु हरयः।
वि च नशन्न इषो अरातयोऽर्यो नशन्त सनिषन्त नो धियः ॥१॥
उत्तेजित नहुने सोमरसले हामीलाई प्रेरणा र वर्षाको हरियो रस प्रदान गरोस्। हाम्रा अन्नका शत्रु नाश होऊन्। हाम्रो भावना देवताकहाँ पुगोस् र हामी सफल होऔँ।

प्र णो धन्वन्त्विन्दवो मदच्युतो धना वा येभिरर्वतो जुनीमसि।
तिरो मर्तस्य कस्य चित्परिह्वृतिं वयं धनानि विश्वधा भरेमहि ॥२॥
सोमरसले हाम्रो आनन्द बढाउँदै धनलाई हाम्रा नजिकै आउनका लागि प्रेरित गरोस्। बलवान सोमका शक्तिले सबै बाधा पन्छैदै हामी शत्रुसित प्रतिस्पर्धा गर्न सकौँ र अनेकौँ खालका धन प्राप्त गर्नमा समर्थ होऔँ।

उत स्वस्या अरात्या अरिर्हि ष उतान्यस्या अरात्या वृको हि षः।
धन्वन्न तृष्णा समरीत ताँ अभि सोम जहि पवमान दुराध्यः ॥३॥
सोमले आफ्ना र अर्काका शत्रु संहार गर्दछ। मरुदेशमा रहनेको तिर्खाजस्तो सोमदेव शत्रुका पछाडि लागेर तिनको नाश गर।

दिवि ते नाभा परमो य आददे पृथिव्यास्ते रुरुहुः सानवि क्षिपः।
अद्रयस्त्वा बप्सति गोरधि त्वच्य१प्सु त्वा हस्तैर्दुदुहुर्मनीषिणः ॥४॥
हे सोमदेव ! तिम्रो हविष्यान्न स्वीकार गर्ने अंश द्युलोकमा सर्वोपरि रहन्छ। पृथिवीका उच्च भागमा रहेर त्यो विस्तृत हुन्छ। ज्ञानीहरूले ढुङ्गामा कुटेर तिम्रो रस निकाल्छन् र त्यसलाई हातले जलमा मिसाएर भूमिका पृष्ठ भागमा स्थापित गर्दछन्।

एवा त इन्दो सुभ्वं सुपेशसं रसं तुञ्जन्ति प्रथमा अभिश्रियः।
निदंनिदं पवमान नि तारिष आविस्ते शुष्मो भवतु प्रियो मदः ॥५॥
हे सोमदेव ! मुख्य याजकहरू जम्मा भएर यज्ञस्थलमा सौन्दर्ययुक्त रस निकाल्छन्। हे सोमदेव ! हाम्रा शत्रु संहार गर। तिम्रो आनन्दवर्द्धक, बलवर्द्धक रस प्रकट होस्।

[सूक्त - ८०]

**ऋषि** - वसु भारद्वाज। **देवता** - पवमान सोम। **छन्द** - जगती।

सोमस्य धारा पवते नृचक्षस ऋतेन देवान्हवते दिवस्परि।
बृहस्पते रवथेना वि दिद्युते समुद्रासो न सवनानि विव्यचुः ॥१॥
सोमरसको धारा शोधित हुँदै छ। सर्वद्रष्टा सोमदेव यज्ञमा देवतालाई सुखी बनाउँछन्। बृहस्पतिदेवका स्तुतिले सोम द्युलोकमा सर्वोपरि स्थापित हुन्छ। पृथिवीमा समुद्र व्याप्त भएझैं यज्ञमा सोमरस व्याप्त छ।

यं त्वा वाजिन्नघ्न्या अभ्यनूषतायोहतं योनिमा रोहसि द्युमान्।
मघोनामायुः प्रतिरन्महि श्रव इन्द्राय सोम पवसे वृषा मदः ॥२॥
हे बलवान् सोमदेव ! अविनाशी वाणीले स्तुति गर्दा तिमी सुवर्ण आभूषणले सजिएका हातले संस्कारित भएर यज्ञस्थलमा प्रतिष्ठित र तेजस्वी छौ। हे सोमदेव ! यज्ञकर्तालाई आयु र धेरै अन्न प्रदान गर्दै तिमी इन्द्रदेवलाई आनन्द र बल बढाइदेऊ।

एन्द्रस्य कुक्षा पवते मदिन्तम ऊर्जं वसानः श्रवसे सुमङ्गलः।
प्रत्यङ् स विश्वा भुवनाभि पप्रथे क्रीळन्हरिरत्यः स्यन्दते वृषा ॥३॥
सोमरस इन्द्रदेवलाई सन्तुष्ट गर्न निकालिन्छ। अन्न बढाउन र आनन्ददायी बल प्राप्त गर्न सोमरस निकालिन्छ। सोमरस सबै भुवनलाई प्रत्यक्ष रूपले प्रकाशित गर्दै ठूलो हित गर्दछ। हरियो आभा भएको सोम फुर्तिलो घोडाजस्तै यज्ञस्थलमा खेल्दै बलशाली भएर टाढासम्म व्याप्त हुन्छ।

तं त्वा देवेभ्यो मधुमत्तमं नरः सहस्रधारं दुहते दश क्षिपः।
नृभिः सोम प्रच्युतो ग्रावभिः सुतो विश्वान्देवाँ आ पवस्वा सहस्रजित् ॥४॥
हजारौं धारा हुने अत्यन्त मधुर सोमरस देवताका निम्ति याजकले दसै औँलाले निकाल्छन्। हे सोमदेव ! ढुङ्गाले कुटेर याजकहरूले निकालिएका तिमी देवताका लागि हजारौं किसिमले विजय प्राप्त गराउने रस प्रदान गर।

तं त्वा हस्तिनो मधुमन्तमद्रिभिर्दुहन्त्यप्सु वृषभं दश क्षिपः।
इन्द्रं सोम मादयन्दैव्यं जनं सिन्धोरिवोर्मिः पवमानो अर्षसि ॥५॥
ढुङ्गाले कुटेर राम्रा हातका दस औँलाले बलियो र मिठो सोमरस पानीमा मिसाउँछन्। इन्द्रदेव र अन्य देवतालाई आनन्दित गर्ने हे पवित्र एवं बलशाली सोमदेव ! तिमी सिन्धुको लहरजस्तै अति शुद्ध भएर प्रवाहित होऊ।

[सूक्त - ८१]

ऋषि - वसु भारद्वाज। देवता - पवमान सोम। छन्द - जगती त्रिष्टुप्।

प्र सोमस्य पवमानस्योर्मय इन्द्रस्य यन्ति जठरं सुपेशसः।
दध्ना यदीमुन्नीता यशसा गवां दानाय शूरमुदमन्दिषुः सुताः ॥१॥
शोधित सोमरसको सुन्दर धारा इन्द्रदेवका पेटमा प्रवेश गर्दै छ। गाईका दहीसित यो सोमरस मिसाउँदा वीर इन्द्रदेवलाई दान दिनका लागि उत्तेजित गराउँछ।

अच्छा हि सोमः कलशाँ असिष्यददत्यो न वोढहा रघुवर्तनिर्वृषा।
अथा देवानामुभयस्य जन्मनो विद्वाँ अश्नोत्यमुत इतश्च यत् ॥२॥
रथ तान्ने घोडा द्रुतगतिले कुदेझैं यो सोम उत्तम विधिले कलशमा स्थापित हुन्छ। बलशाली सोम सूर्य आदि लोक घुम्न सक्दछ। द्युलोक र भूलोकमा व्याप्त ज्ञानी सोमले देवता खुसी पार्दछ।

आ नः सोम पवमानः किरा वस्विन्दो भव मघवा राधसो महः।
शिक्षा वयोधो वसवे सु चेतुना मा नो गयमारे अस्मत्परा सिचः ॥३॥
हे शोधित सोमदेव ! तिमी महान् ऐश्वर्य प्रदान गर। हे अन्नदाता सोमदेव हामीलाई कल्याणकारी ज्ञानयुक्त धन प्राप्त गराऊ। त्यो धन हामीदेखि कहिल्यै टाढा नहोस्।

आ नः पूषा पवमानः सुरातयो मित्रो गच्छन्तु वरुणः सजोषसः।
बृहस्पतिर्मरुतो वायुरश्विना त्वष्टा सविता सुयमा सरस्वती ॥४॥
पोषणकारी पूषादेव, पवित्र सोम, मित्र, श्रेष्ठ वरुण, ज्ञान प्रदाता बृहस्पति, मरुत्गण, वायु, अश्विनीकुमार, त्वष्टादेव, सवितादेव, विद्यादायिनी सरस्वती आदि सबै देवशक्ति हामीकहाँ आऊन्।

उभे द्यावापृथिवी विश्वमिन्वे अर्यमा देवो अदितिर्विधाता।
भगो नृशंस उर्वन्तरिक्षं विश्वे देवाः पवमानं जुषन्त ॥५॥
सर्वव्यापी द्यावापृथिवी, अर्यमादेव, प्रकृतिदेवी, विधातादेव, भगदेव र मानिसबाट प्रशंसित विशाल अन्तरिक्ष आदि सबै देवसमुदायले यो सोमरस पान गरुन्।

[सूक्त - ८२]

ऋषि - वसु भारद्वाज। देवता - पवमान सोम। छन्द - जगती त्रिष्टुप्।

असावि सोमो अरुषो वृषा हरी राजेव दस्मो अभि गा अचिक्रदत्।
पुनानो वारं पर्येत्यव्ययं श्येनो न योनिं घृतवन्तमासदम् ॥१॥
ओजस्वी, शक्तिवर्द्धक, हरियो वर्णको, सम्राट्झैं सौन्दर्ययुक्त सोमरस निस्कँदै छ। गाईको दुध मिसाएपछि सोम ध्वनि गर्दै पवित्र भएर चाल्नीबाट छानेर तयार हुन्छ। त्यसपछि श्येनपक्षीझैं पानीका भाँडामा स्थित हुन्छ।

कविर्वेधस्या पर्येषि माहिनमत्यो न मृष्टो अभि वाजमर्षसि।
अपसेधन्दुरिता सोम मृळय घृतं वसानः परि यासि निर्णिजम् ॥२॥
हे सोमदेव ! यज्ञको इच्छा हुँदा जलयुक्त भएर चाल्नीले शोधित भएपछि युद्धस्थलमा जाने अश्वजस्तै वेगले आएर अडिन्छौ। हे सोमदेव ! हामीलाई दुष्प्रवृत्तिबाट टाढा राखेर सुखी बनाऊ।

पर्जन्यः पिता महिषस्य पर्णिनो नाभा पृथिव्या गिरिषु क्षयं दधे।
स्वसार आपो अभि गा उतासरन्त्सं ग्रावभिर्नसते वीते अध्वरे॥३॥

पानी बर्साउने बादल ठूला पात हुने सोमको पिता हो। सोम पृथ्वीका केन्द्रस्थलमा रहने पर्वतका निवासी हो। सोम गाईको दुध, पानी र स्तुति पाएर यज्ञस्थलमा रहन्छ।

जायेव पत्यावधि शेव मंहसे पज्राया गर्भ शृणुहि ब्रवीमि ते।
अन्तर्वाणीषु प्र चरा सु जीवसेऽनिन्द्यो वृजने सोम जागृहि॥४॥

पतिका लागि पत्नी सुखद भएझैं यजमानका लागि सोम सुखकारी हुन्छ। हे पर्जन्यका पुत्र सोमदेव ! स्तुतिभित्र शुभ गुणमा रहनका लागि तिमीलाई बिन्ती गर्दछौं, त्यो सुन। हे स्तुत्य सोमदेव ! हाम्रो जीवन सुखी गराउन शत्रुमाथि दृष्टि राख।

यथा पूर्वेभ्यः शतसा अमृध्रः सहस्रसाः पर्यया वाजमिन्दो।
एवा पवस्व सुविताय नव्यसे तव व्रतमन्वापः सचन्ते॥५॥

हे सोम ! ऋषिले सयौं किसिमका धन दिएझैं हिंसारहित भएर हजारौं किसिमका धन हामीलाई देऊ र ज्ञानको तिर्खा लाग्नेलाई सुखदायी रस देऊ। तिम्रो व्रत यज्ञीय कर्मकै अनुसार पूरा होस्।

[सूक्त - ८३]

**ऋषि** – पवित्र आङ्गिरस। **देवता** – पवमान सोम। **छन्द** – जगती।

पवित्रं ते विततं ब्रह्मणस्पते प्रभुर्गात्राणि पर्येषि विश्वतः।
अतप्ततनूर्न तदामो अश्नुते शृतास इद्वहन्तस्तत्समाशत॥१॥

हे मन्त्रका अधिपति सोमदेव ! तिम्रा पवित्र अङ्ग सर्वत्र विद्यमान छन्। शक्तिशाली भएका कारण पान गर्नेका शरीरमा तिमी स्फुर्ति बढाइदिन्छौं। तपस्याले शरीर खिइएका आलाकाँचाले त्यो फल प्राप्त गर्न सक्दैनन्। परिपक्व भएपछि मात्रै पाउन सक्दछन्।

तपोष्पवित्रं विततं दिवस्पदे शोचन्तो अस्य तन्तवो व्यस्थिरन्।
अवन्त्यस्य पवीतारमाशवो दिवस्पृष्ठमधि तिष्ठन्ति चेतसा॥२॥

सोमका पवित्र अङ्ग शत्रु सताउनका लागि द्युलोकमा फैलिएका छन्। यिनको चम्कँदो रश्मि द्युलोकका पृष्ठ भागमा विशेष रीतिले स्थिर भएको छ। यस रश्मिले याज्ञिकलाई रक्षा गर्दछ।

अरूरुचदुषसः पृश्निरग्रिय उक्षा बिभर्ति भुवनानि वाजयुः।
मायाविनो ममिरे अस्य मायया नृचक्षसः पितरो गर्भमा दधुः॥३॥

सूर्यका रूपमा सोम नै स्वयं प्रकाशित एवं प्रमुख हुन्। वर्षा गराएर पोषक जलका धाराले सबै प्राणीलाई पोषण प्रदान गर्ने उनै हुन्। सोमका क्षमताले संसारको निर्माण हुन्छ। उनका आज्ञाले देवता र मानिसले औषधिमा गर्भको स्थापना गरेका हुन्।

गन्धर्व इत्था पदमस्य रक्षति पाति देवानां जनिमान्यद्भुतः।
गृभ्णाति रिपुं निधया निधापतिः सुकृत्तमा मधुनो भक्षमाशत॥४॥

सत्यका स्वरूप सूर्यदेव सोमलाई संरक्षण प्रदान गर्दछन्। सोम देवत्वधारीका जीवनको रक्षा गर्दछ। शत्रुलाई जालले जेल्छ र पाशाधिपति श्रेष्ठ कार्यका लागि यसै मधुर सोमको पान गर्दछन्।

हविर्हविष्मो महि सद्म दैव्यं नभो वसानः परि यास्यध्वरम्।
राजा पवित्ररथो वाजमारुहः सहस्रभृष्टिर्जयसि श्रवो बृहत्॥५॥

राम्रो रथ लिएर युद्धमा गएका राजाले अनेकौं शस्त्रास्त्रले युद्ध गरेर धेरै किसिमको जितेझैं हे जलयुक्त सोमदेव ! महान् जलनिधिमा रहने तिमी पवित्र जलसँगै यज्ञशालामा प्रतिष्ठित होऊ।

[सूक्त - ८४]

**ऋषि** – प्रजापति वाच्य। **देवता** – पवमान सोम। **छन्द** – जगती।

पवस्व देवमादनो विचर्षणिरप्सा इन्द्राय वरुणाय वायवे।
कृधी नो अद्य वरिवः स्वस्तिमदुरुक्षितौ गृणीहि दैव्यं जनम्॥१॥

हे सोमदेव ! आनन्ददायी, सर्वद्रष्टा, जलधारालाई प्रवाहित गर्ने रस प्रदान गर। इन्द्र, वरुण र वायु आदि देवताका लागि रस प्रदान गर। आज हाम्रो धन कल्याणकारी बनाऊ र यस विशाल भूमिमा देवतालाई सुखी बनाऊ।

आ यस्तस्थौ भुवनान्यमर्त्यो विश्वानि सोमः परि तान्यर्षति।
कृण्वन्त्सञ्चृतं विचृतमभिष्टय इन्दुः सिषक्त्युषसं न सूर्यः ॥२॥

उषाका साथमा सूर्यदेव रहेझैं इष्ट फलप्रदाता सोम यज्ञमा रहन्छन्। भुवनमा व्याप्त अविनाशी सोमले देवत्व प्राप्त गरेकालाई दिव्य संस्कारले सुदृढ गराउँछन् र कुविचार पर हटाउँदै देवतासँग रहन्छन्।

आ यो गोभिः सृज्यत ओषधीष्वा देवानां सुम्न इषयन्नुपावसुः।
आ विद्युता पवते धारया सुत इन्द्रं सोमो मादयन्दैव्यं जनम् ॥३॥

गाईका दुधसित मिसाइने सोम देवतालाई सुख दिनका लागि निकालिन्छ। त्यो सोम देवता प्राप्त गर्ने कामनाले शत्रु पराजित गरेर उनको धन प्राप्त गराउँछ। त्यही सोम धाराका रूपमा रस प्रदान गर्दै इन्द्र र अन्य देवतालाई आनन्द दिन्छ।

एष स्य सोमः पवते सहस्रजिद्धिन्वानो वाचमिषिरामुषर्बुधम्।
इन्दुः समुद्रमुदियर्ति वायुभिरेन्द्रस्य हार्दि कलशेषु सीदति ॥४॥

रस प्रदान गर्ने सोम हजारौँ किसिमका धनमाथि विजय प्राप्त गर्दै स्तोतालाई स्तुति गर्न प्रेरित गर्दछ। उषा कालमा जाग्नेलाई इच्छाअनुसारको प्रेरणा दिन्छ। यो सोम वायुद्वारा रसप्रवाहलाई माथि जाने प्रेरणा दिँदै इन्द्रदेवका लागि कलशमा स्थापित हुन्छ।

अभि त्यं गावः पयसा पयोवृधं सोमं श्रीणन्ति मतिभिः स्वर्विदम्।
धनञ्जयःपवते कृत्व्यो रसो विप्रः कविः काव्येना स्वर्चनाः ॥५॥

दुधसित मिसिएर विस्तृत हुने सोमलाई वाणीरूपी गाईले स्तुतिका साथ आफ्ना दुधमा मिसाउँछन्। शत्रुका धनमाथि विजय प्राप्त गर्ने सोम स्तोत्र गायनबाट रस प्रदान गर्छ। यो कर्मकौशल बढाउने मेधावान् ज्ञानी सोम पौष्टिक अन्नले युक्त रस प्रदान गर्दछ।

[सूक्त – ८५]

ऋषि – वेन भार्गव। देवता – पवमान सोम। छन्द – जगती त्रिष्टुप्।

इन्द्राय सोम सुषुतः परि स्रवाऽपामीवा भवतु रक्षसा सह।
मा ते रसस्य मत्सत द्वयाविनो द्रविणस्वन्त इह सन्त्विन्दवः ॥१॥

हे सोमदेव ! तिमी गतिलो ढङ्गले पेलेर तयार भएपछि इन्द्रदेवलाई पिउनका लागि प्रवाहित भई रोगरूपी राक्षसबाट मुक्त होऊ। दोहोरो खालको व्यवहार गर्ने दुष्टलाई सोमरस प्राप्त नहोस्। यस यज्ञमा सोमरस ऐश्वर्ययुक्त बनोस्।

अस्मान्त्समर्ये पवमान चोदय दक्षो देवानामसि हि प्रियो मदः।
जहि शत्रूँरभ्या भन्दनायतः पिबेन्द्र सोममव नो मृधो जहि ॥२॥

हे सोमदेव ! हामीलाई युद्धका लागि प्रेरित गर। हाम्रा नजिक आएर शत्रुमाथि विजय प्राप्त गराऊ। तिमी देवतालाई पूरा दक्ष र खुसी गराउँछौ। स्तुतिको कामना गर्ने हे इन्द्रदेव ! सोमरस पान गरेर हाम्रा शत्रु पराजित गर।

अदब्ध इन्दो पवसे मदिन्तम आत्मेन्द्रस्य भवसि धासिरुत्तमः।
अभि स्वरन्ति बहवो मनीषिणो राजानमस्य भुवनस्य निंसते ॥३॥

हे सोम ! हिंसारहित र आनन्ददायक रस प्रदान गर। तिमी सर्वोत्तम धारक र इन्द्रदेवका लागि आन्तरिक रूपमा प्रिय छौ। भुवनका राजा सोमलाई ज्ञानीले स्तुति गर्दछन् र अति घनिष्ठजस्तै उनलाई प्राप्त गर्दछन्।

सहस्रणीथः शतधारो अद्भुत इन्द्रायेन्दुः पवते काम्यं मधु।
जयन्क्षेत्रमभ्यर्षा जयन्नप उरुं नो गातुं कृणु सोम मीढ्वः ॥४॥

सयौं धारामा बग्ने, हजारौँ किसिमले ल्याइने अद्भुत सोम इन्द्रदेवका निम्ति, उनले रुचाउने रस प्रदान गर्दछ। हे सोमदेव ! रणक्षेत्र जितेर अगाडि बढेको मेघजस्तै सुखका वर्षा गराउँदै र प्रजालाई अनुशासनमा राख्दै हाम्रा निम्ति उन्नतिको मार्ग बनाइदेऊ।

कनिक्रदत्कलशे गोभिरज्यसे व्यव्ययं समया वारमर्षसि।
मर्मृज्यमानो अत्यो न सानसिरिन्द्रस्य सोम जठरे समक्षरः ॥५॥

हे सोमदेव ! तिमी गाईको दुधसित मिसिएर शब्दनाद गर्दै ऊनीले बनेको चाल्नीबाट कलशमा स्थापित होऊ। फुर्तिलो घोडाजस्तै परिष्कृत भएर सेवन योग्य बनेका तिमीले इन्द्रदेवलाई सन्तुष्ट गर।

स्वादुः पवस्व दिव्याय जन्मने स्वादुरिन्द्राय सुहवीतुनाम्ने।
स्वादुर्मित्राय वरुणाय वायवे बृहस्पतये मधुमाँ अदाभ्यः ॥६॥

हे सोमदेव ! तिमी दिव्यता प्राप्त गर्ने देवताहरूका निमित्त आफ्नो मधुर रस प्रदान गर। पुण्यशील इन्द्रका निम्ति मिठो रस देऊ। मित्र, वरुण, वायु र बृहस्पति आदिका लागि अमृतजस्तै मधुर सोमरस प्रदान गर।

अत्यं मृजन्ति कलशे दश क्षिपः प्र विप्राणां मतयो वाच ईरते।
पवमाना अभ्यर्षन्ति सुष्टुतिमेन्द्रं विशन्ति मदिरास इन्दवः ॥७॥

सोमलाई कलशमा सबैभन्दा माथि राखेर दस औंलाले शोधित गर्दा स्तोताहरूले स्तुति गरेको पवित्र सोमरसले सुन्दछ। आनन्दप्रदायक सोमरस इन्द्रदेवलाई प्राप्त हुन्छ।

पवमानो अभ्यर्षा सुवीर्यमुर्वीं गव्यूतिं महि शर्म सप्रथः।
माकिर्नो अस्य परिषूतिरीशतेन्दो जयेम त्वया धनंधनम् ॥८॥

हे पवित्र सोमरस ! हामीलाई श्रेष्ठ पराक्रमले युक्त महान् सुख प्रदान गर्ने सुविस्तृत मार्ग देखाऊ। हे सोमदेव ! तिम्रा नजिकै हामी हरेक किसिमका धन प्राप्त गरौं। त्यो धन कुनै हिंसकले आफ्ना अधिकारमा लिन नसकोस्।

अधि द्यामस्थाद्वृषभो विचक्षणोऽरूरुचद्वि दिवो रोचना कविः।
राजा पवित्रमत्येति रोरुवद्दिवः पीयूषं दुहते नृचक्षसः ॥९॥

बलवान् सर्वद्रष्टा, ज्ञानी सोम द्युलोकमा रहेर आफ्नो तेज विशेष रूपले प्रकाशित गरेर अमृतजस्तै रस प्रदान गर्दछ। चाल्नीमा शोधित हुँदा शब्द गर्दै पात्रमा एकत्र हुन्छ।

दिवो नाके मधुजिह्वा असश्चतो वेना दुहन्त्युक्षणं गिरिष्ठाम्।
अप्सु द्रप्सं वावृधानं समुद्र आ सिन्धोरूर्मा मधुमन्तं पवित्र आ ॥१०॥

सुखमय वातावरणमा रहेर मधुर भाषा बोल्ने ऋषिहरू अलगअलग पर्वतमा रहने, जलले बढ्ने रसरूपी सोमलाई सिन्धुका लहरमा मिसाएर पवित्र बनाउँछन्।

नाके सुपर्णमुपपप्तिवांसं गिरो वेनानामकृपन्त पूर्वीः।
शिशुं रिहन्ति मतयः पनिप्नतं हिरण्ययं शकुनं क्षामणि स्थाम् ॥११॥

द्युलोकमा उत्पन्न सोमलाई आदि कालदेखि ज्ञानीहरू स्तुति गर्दछन्। सुवर्णजस्तो तेजस्वी, शक्तिमान्, शब्द गर्ने, बालकजस्तै संस्कार योग्य सोम यज्ञस्थलमा स्थापित भएर स्तुति प्राप्त गर्दछ।

ऊर्ध्वो गन्धर्वो अधि नाके अस्थाद्विश्वा रूपा प्रतिचक्षाणो अस्य।
भानुः शुक्रेण शोचिषा व्यद्यौत्प्रारूरुचद्रोदसी मातरा शुचिः ॥१२॥

सूर्यको किरण धारण गर्ने सोम स्वर्गभन्दा माथिल्लो स्थानमा रहेर सूर्यदेवका अनेकौं रूप हेर्दछ। तेजस्वी प्रकाशयुक्त सूर्यदेव चम्कन्छन्। माताजस्ता द्युलोक र पृथिवीलाई तेजस्वी सूर्यदेवले प्रकाशित गर्दछन्।

[सूक्त - ८६]

**ऋषि** - अत्रिभौम गृत्समद भार्गव शौनक। **देवता** - पवमान सोम। **छन्द** - जगती।

प्र त आशवः पवमान धीजवो मदा अर्षन्ति रघुजा इव त्मना।
दिव्याः सुपर्णा मधुमन्त इन्दवो मदिन्तमासः परिकोशमासते ॥१॥

हे सोमदेव ! द्रुतगामी घोडाजस्तै तिम्रो आनन्ददायी रस व्यापक मनका वेगले प्रवाहित हुँदै छ। तेज र ज्ञानले युक्त यो मधुर सोमरस हर्षित हुँदै कलशमा स्थापित हुन्छ।

प्र ते मदासो मदिरास आशवोऽसृक्षत रथ्यासो यथा पृथक्।
धेनुर्न वत्सं पयसाभि वज्रिणमिन्द्रमिन्दवो मधुमन्त ऊर्मयः ॥२॥

गतिमान् रथका घोडाझैं तिम्रो आनन्ददायी रस स्वतन्त्र प्रवाहित हुँदै छ। गाईले बाछो सन्तुष्ट बनाएझैं मधुर धारामा प्रवाहित सोमरसले वज्रधारी इन्द्रदेवलाई सन्तुष्ट गर्छ।

अत्यो न हियानो अभि वाजमर्ष स्वर्वित्कोशं दिवो अद्रिमातरम्।
वृषा पवित्रे अधि सानो अव्यये सोमः पुनान इन्द्रियाय धायसे ॥३॥

युद्धले प्रेरित घोडा गएझैं र मेघद्वारा जलसञ्चार भएझैं सर्वज्ञ सोम द्युलोकरूपी कोशमा प्रवेश

गर्दछ। हे बलशाली सोमदेव ! अविनाशी पवित्रताले छानिएर तिमी धारणकर्ता इन्द्रदेवका निम्ति तयार होऊ।

**प्र त आश्विनीः पवमान धीजुवो दिव्या असृग्रन्पयसा धरीमणि।**
**प्रान्तर्ऋषयः स्थाविरीरसृक्षत ये त्वा मृजन्त्यृषिषाण वेधसः ॥४॥**

हे सोमदेव ! दिव्य रसले परिपूर्ण तिम्रो धारो वाणीको प्रवाहसँगै कलशमा पस्छ। संस्कारित गर्ने विद्वान् ऋषिले माथिको पात्रबाट तलको पात्रमा खन्याउँछन्।

**विश्वा धामानि विश्वचक्ष ऋभ्वसः प्रभोस्ते सतः परि यन्ति केतवः।**
**व्यानशिः पवसे सोम धर्मभिः पतिर्विश्वस्य भुवनस्य राजसि ॥५॥**

हे सर्वदर्शी, व्यापक स्वभावका सोमदेव ! तिम्रा लामा रश्मिको प्रभाव सर्वत्र फैलियो। स्वाभाविक धर्मले शुद्ध भएर सम्पूर्ण विश्वका स्वामीका रूपमा सुशोभित छौ।

**उभयतः पवमानस्य रश्मयो ध्रुवस्य सतः परि यन्ति केतवः।**
**यदी पवित्रे अधि मृज्यते हरिः सत्ता नि योना कलशेषु सीदति ॥६॥**

पवित्र, हरियो आभासम्पन्न संस्कारयुक्त सोम भाँडामा अडिन्छ। त्यसको सुवास चारै दिशामा फैलिन्छ र पवित्रता सञ्चार गर्दछ।

**यज्ञस्य केतुः पवते स्वध्वरः सोमो देवानामुप याति निष्कृतम्।**
**सहस्रधारः परि कोशमर्षति वृषा पवित्रमत्येति रोरुवत् ॥७॥**

यज्ञचक्र प्रकाशित गर्ने, उत्तम याज्ञिकरूपी सोमले देवस्थलमा पुगेर रस प्रदान गर्दछ। रस प्रदान गर्ने सोम शब्दनाद गर्दै हजारौं धारामा शोधन प्रणाली पार गरेर निर्धारित कोशमा जम्मा हुन्छ।

**राजा समुद्रं नद्यो३ वि गाहतेऽपामूर्मिं सचते सिन्धुषु श्रितः।**
**अध्यस्थात्सानु पवमानो अव्ययं नाभा पृथिव्या धरुणो महो दिवः ॥८॥**

अन्तरिक्षका जलमा मिसिएर राजा सोम जलका प्रवाहमा सम्मिलित हुँदै समुद्रमा मिश्रित हुन्छ। द्युलोक धारण गर्ने यो महान् सोमरस अविनाशी शोधक उपकरणमा छानिएर पवित्र हुन्छ।

**दिवो न सानु स्तनयन्नचिक्रदद् द्यौश्च यस्य पृथिवी च धर्मभिः।**
**इन्द्रस्य सख्यं पवते विवेविदत्सोमः पुनानः कलशेषु सीदति ॥९॥**

द्युलोकका सर्वोच्च स्थानको आकाङ्क्षा गर्दै यो सोम इन्द्रदेवसित मित्रताको आशाले शब्दनाद गर्दछ। यसका धारणशक्तिले द्युलोक र पृथिवी धारण गरेको छ। यस्तो सोमरस शोधित भएर कलशमा विराजमान हुन्छ।

**ज्योतिर्यज्ञस्य पवते मधु प्रियं पिता देवानां जनिता विभूवसुः।**
**दधाति रत्नं स्वधयोरपीच्यं मदिन्तमो मत्सर इन्द्रियो रसः ॥१०॥**

यज्ञप्रकाशक, देवताको प्रिय, मधुर रसप्रदायक, पोषक, वैभवशाली, आनन्दवर्द्धक, जनक, उत्साहवर्द्धक, इन्द्रदेवलाई प्रिय लाग्ने हे सोमदेव ! तिमी अन्तरिक्ष र भूलोकको गुप्त वैभव यजमानका लागि प्रदान गर्दछौ।

**अभिक्रन्दन्कलशं वाज्यर्षति पतिर्दिवः शतधारो विचक्षणः।**
**हरिर्मित्रस्य सदनेषु सीदति मर्मृजानोऽविभिः सिन्धुभिर्वृषा ॥११॥**

दिव्यलोकका अधिपति, सयौं विधिले शोधित, बुद्धिवर्द्धक र बलशाली हरियो आभाले युक्त सोमरस ध्वनिसँगै कलशमा स्थापित छ। जल मिश्रित भएर शोधनयन्त्रले शोधित हे शौर्यवान् सोमदेव ! अभीष्ट पूर्तिका लागि मित्रभैं यज्ञका पात्रमा प्रतिष्ठित होऊ।

**अग्रे सिन्धूनां पवमानो अर्षत्यग्रे वाचो अग्रियो गोषु गच्छति।**
**अग्रे वाजस्य भजते महाधनं स्वायुधः सोतृभिः पूयते वृषा ॥१२॥**

हे सोमदेव ! जल मिश्रित हुनुभन्दा पहिले शोधित हुनका लागि र स्तुति प्राप्त गर्नका लागि तिमी पूज्यभावले आमन्त्रित छौ। असल आयुधले युक्त भएर शौर्यका लागि गाईलाई संरक्षण प्रदान गर्दै तिमी प्रवाहित भएर प्रचुर वैभव प्रदान गर्दछौ। हे सोमदेव ! तिमी याजकबाट शोधित हुने गर्दछौ।

**अयं मतवाञ्छकुनो यथा हितोऽव्ये ससार पवमान ऊर्मिणा।**
**तव क्रत्वा रोदसी अन्तरा कवे शुचिर्धिया पवते सोम इन्द्र ते ॥१३॥**

हे सोमदेव ! स्तोत्रले स्तुत्य, यज्ञस्थलमा प्रतिष्ठित हुन चरो द्रुतगामी भएभैं अनश्वर शोधकयन्त्रमा

धाराका रूपमा तिमी तलको पात्र आऊ। हे इन्द्रदेव ! तिम्रा सुकर्मले नै द्युलोक र पृथिवीका माझमा यो पवित्र सोम स्तुतिसँग शोधित हुन्छ।

**द्रापिं वसानो यजतो दिविस्पृशमन्तरिक्षप्रा भुवनेष्वर्पितः।**
**स्वर्जज्ञानो नभसाभ्यक्रमीत्प्रत्नमस्य पितरमा विवासति ॥१४॥**

पूज्य सोम द्युलोक स्पर्श गर्ने रक्षा कवच धारण गर्दछ र आफ्ना प्रकाशले अन्तरिक्षलाई पूर्णता प्रदान गर्दछ। स्वर्गको जस्तो सुख उत्पन्न गराउने सोमरस आकाशमार्गबाट जलसँग सञ्चरित हुँदै आउँछ। यसै किसिमले आफ्ना प्राचीन पुर्खाको सेवा गर्दछ।

**सो अस्य विशे महि शर्म यच्छति यो अस्य धाम प्रथमं व्यानशे।**
**पदं यदस्य परमे व्योमन्यतो विश्वा अभि सं याति संयतः ॥१५॥**

सोम इन्द्रदेवको शरीरमा सर्वप्रथम प्रविष्ट भएर उनलाई सन्तुष्ट गराउँदै महान् सुख प्रदान गर्दछ। द्युलोकमा सोमको पवित्र स्थान त्यही हो। सोमबाट तृप्त भएर इन्द्रदेव सधैं सङ्ग्राममा जान्छन्।

**प्रो अयासीदिन्दुरिन्द्रस्य निष्कृतं सखा सख्युर्न प्र मिनाति सङ्गिरम्।**
**मर्यइव युवतिभिः समर्षति सोमः कलशे शतयाम्ना पथा ॥१६॥**

मित्रजस्तै हुनाले सोमरस इन्द्रदेवका पेटमा पुगेपछि उनलाई दुःख दिँदैन। तरुनीका माझमा तन्नेरी मिलेर रहेझैं पानीसित सोम मिसिएर शोधक यन्त्रका सयौं प्वालबाट निस्केर कलशमा प्रवेश गर्दछ।

**प्र वो धियो मन्द्रयुवो विपन्युवः पनस्युवः संवसनेष्वक्रमुः।**
**सोमं मनीषा अभ्यनूषत स्तुभोऽभि धेनवः पयसेमशिश्रयुः ॥१७॥**

हे सोमदेव ! तिम्रो ध्यान गर्ने र आनन्दपूर्वक स्तुति गर्ने विचार भएका याजकहरू यज्ञस्थलमा यज्ञ गर्न लाग्दा मननशील स्तोता तरङ्गित भएर तिम्रो स्तुति गर्दछन्। त्यस बेला गाईको दुध तिमीसित मिसाउँछन्।

**आ नः सोम संयतं पिप्युषीमिषमिन्दो पवस्व पवमानो अस्रिधम्।**
**या नो दोहते त्रिरहन्नसश्चुषी क्षुमद्वाजवन्मधुमत्सुवीर्यम् ॥१८॥**

हे पवित्र रहने तेजोमय सोमदेव ! दिनका तीन सवनमा प्रयुक्त अन्न प्रशंसित, बलवर्द्धक, मधुर र उत्तम पुत्र प्रदान गर्ने हुन्छ। हाम्रो त्यही पोषक अन्न तिमी आफ्ना तरङ्गले शुद्ध गर।

**वृषा मतीनां पवते विचक्षणः सोमो अह्नः प्रतरीतोषसो दिवः।**
**क्राणा सिन्धूनां कलशाँ अवीवशदिन्द्रस्य हार्द्याविशन्मनीषिभिः ॥१९॥**

स्तोताको कामना पूरा गराउने, संसारका द्रष्टा तथा दिन, उषा र आदित्यको शक्ति संवर्द्धक सोम छानिन्छ। नदीको प्राणस्वरूप पानीमा मिसाएर मनीषी उद्गाताहरूले निकालेको यो सोम इन्द्रदेवका पेटमा प्रवेश गर्ने रहरले पात्रमा स्थित हुन्छ।

**मनीषिभिः पवते पूर्व्यः कविर्नृभिर्यतः परि कोशाँ अचिक्रदत्।**
**त्रितस्य नाम जनयन्मधु क्षरदिन्द्रस्य वायोः सख्याय कर्तवे ॥२०॥**

सर्वज्ञ शोधित सोम याजकहरू कलशमा एकत्र गर्छन्। तीनै लोकमा पूजित इन्द्रदेवको ख्याति बढाउँदै तृप्त गर्नका लागि सोम वायुसँगै कोशमा ध्वनिसितै खस्दछ।

**अयं पुनान उषसो वि रोचयदयं सिन्धुभ्यो अभवदु लोककृत्।**
**अयं त्रिः सप्त दुदुहान आशिरं सोमो हृदे पवते चारु मत्सरः ॥२१॥**

जनहितकारी पवित्र सोम उषालाई प्रकट गर्दछ, नदी बढाउँछ र हृदयमा रहेका एक्काईस घट पुष्ट गराउँदै प्रवाहित हुन्छ।

**पवस्व सोम दिव्येषु धामसु सृजान इन्दो कलशे पवित्र आ।**
**सीदन्निन्द्रस्य जठरे कनिक्रदन्नृभिर्यतः सूर्यमारोहयो दिवि ॥२२॥**

हे सर्वप्रकाशक सोमदेव ! यज्ञस्थलमा तिमी आफ्नो दिव्य रस प्रवाहित गर। कलशमा राखिएको पवित्र सोम इन्द्रदेवका पेटमा ध्वनि गर्दै जान्छ। याजकबाट यज्ञमा प्रतिष्ठित सोम द्युलोकमा सूर्यदेवलाई अर्पित गरिन्छ।

अद्रिभिः सुतः पवसे पवित्र आँ इन्दविन्द्रस्य जठरेष्वाविशन्।
त्वं नृचक्षा अभवो विचक्षण सोम गोत्रमङ्गिरोभ्योऽवृणोरप ॥२३॥

ढुङ्गाले पेलेर निकालेको शोधित पवित्र सोमरस इन्द्रदेवका पेटमा प्रविष्ट हुन्छ। हे सर्वद्रष्ट्य, हे दिव्यद्रष्ट्य सोमदेव ! अङ्गिराका गाईको रक्षक रस आफूभित्र राख।

त्वां सोम पवमानं स्वाध्योऽनु विप्रासो अमदन्नवस्यवः।
त्वां सुपर्ण आभारद्दिवस्परीन्दो विश्वाभिर्मतिभिः परिष्कृतम् ॥२४॥

हे सोमदेव ! स्वाध्यायी ब्राह्मण आफ्नो संरक्षणका कामनाले तिमीबाट निकालेको पवित्र सोमरसको स्तुति गर्दछन्। हे स्तुतिबाट प्रशंसित सोमदेव ! तिमीलाई द्युलोकका माथिल्लो भागबाट पक्षीले लिएर आएको हो।

अव्ये पुनानं परि वार ऊर्मिणा हरिं नवन्ते अभि सप्त धेनवः।
अपामुपस्थे अध्यायवः कविमृतस्य योना महिषा अहेषत ॥२५॥

ऊनीको चाल्नीले चालेको हरियो आभासम्पन्न सोमरस सात धेनुहरूले प्राप्त गर्दछन्। जलमा विद्यमान ज्ञानवर्द्धक सोमलाई मनीषीहरू यज्ञस्थलमा जान प्रेरित गर्दछन्।

इन्दुः पुनानो अति गाहते मृधो विश्वानि कृण्वन्त्सुपथानि यज्यवे।
गाः कृण्वानो निर्णिजं हर्यतः कविरत्यो न क्रीळन्परि वारमर्षति ॥२६॥

सोमरस शोधित भएर विनाशकारी तत्त्वलाई परास्त गर्दै जान्छ र याज्ञिकका लागि श्रेष्ठ मार्ग निर्माण गर्दछ। उसले आफ्नो स्वरूप गाईको जस्तै बनाएर सुशोभित छ। कान्तिमान्, ज्ञानी सोम घोडाझैँ क्रीडा गर्दै वरणयोग्य स्थानमा प्रतिष्ठित हुन्छ।

असश्चतः शतधारा अभिश्रियो हरिं नवन्तेऽव ता उदन्युवः।
क्षिपो मृजन्ति परि गोभिरावृतं तृतीये पृष्ठे अधि रोचने दिवः ॥२७॥

सयौँ धाराका रूपमा निस्केको हरियो आभासम्पन्न सोम र चारैतिर रहने सूर्यदेवको किरण परस्पर एकै साथ रहन्छन्। दिव्य मन्त्रजस्ता वाणीले आवृत्त भएका प्रेरणादायी किरणले सोमरस शुद्ध गर्दछन्। यो सोम द्युलोकका तेस्रो स्थानमा प्रतिष्ठित हुन्छ।

तवेमाः प्रजा दिव्यस्य रेतसस्त्वं विश्वस्य भुवनस्य राजसि।
अथेदं विश्वं पवमान ते वशे त्वमिन्दो प्रथमो धामधा असि ॥२८॥

हे सोमदेव ! सिङ्गो विश्व नै तिम्रो अधीनमा छ। तिमी नै सबै भुवनका स्वामी हौ। तिम्रै दिव्य शक्तिले सबै प्रजा जन्मेका हुन्। हे सोमदेव ! सबैभन्दा पहिले विश्वलाई धारण गर्ने तिमी नै हौ।

त्वं समुद्रो असि विश्ववित्कवे तवेमाः पञ्च प्रदिशो विधर्मणि।
त्वं द्यां च पृथिवीं चाति जभ्रिषे तव ज्योतींषि पवमान सूर्यः ॥२९॥

हे ज्ञानी, जलमय र सर्वज्ञ सोमदेव ! तिमी द्युलोक र पृथिवी धारण गर्दछौ। तिम्रै धारणशक्तिमा पाँचै दिशा विद्यमान छन्। हे सोमदेव ! सूर्यदेवले तिम्रो तेज बढाऊन्।

त्वं पवित्रे रजसो विधर्मणि देवेभ्यः सोम पवमान पूयसे।
त्वामुशिजः प्रथमा अगृभ्णत तुभ्येमा विश्वा भुवनानि येमिरे ॥३०॥

हे शोधित सोमदेव ! रस धारण गर्ने चाल्नीले देवताका निम्ति तिमीलाई पवित्र बनाएको छ। तिम्रो इच्छा गर्ने मुख्य याजकले तिमीलाई ग्रहण गर्दछन्। यी सबै भुवन तिम्रा बलले बाँधिएका छन्।

प्र रेभ एत्यति वारमव्ययं वृषा वनेष्वव चक्रदद्धरिः।
सं धीतयो वावशाना अनूषत शिशुं रिहन्ति मतयः पनिप्नतम् ॥३१॥

बलशाली हरियो आभासम्पन्न सोम ध्वनि गर्दै जलमा व्याप्त हुन्छ र ऊनीका चाल्नीले शोधित हुन्छ। शोधन गर्ने याजकहरू यस सोमको उत्तम विधिले स्तुति गर्दछन्।

स सूर्यस्य रश्मिभिः परि व्यत तन्तुं तन्वानस्त्रिवृतं यथा विदे।
नयन्नृतस्य प्रशिषो नवीयसीः पतिर्जनीनामुप याति निष्कृतम् ॥३२॥

सोमले सूर्यका रश्मि आत्मसात् गरेर दिनका तीनै सवनका यज्ञको विस्तार गर्दछ र यज्ञमा गरेका नयाँ महान् इच्छा यथाविधि पूरा गर्दछ। यो सोमरस जनयित्रीहरूको अधिपति हो। यो सोम सर्वश्रेष्ठ पदमा प्रतिष्ठित हुन्छ।

राजा सिन्धूनां पवते पतिर्दिव ऋतस्य याति पथिभिः कनिक्रदत्।
सहस्रधारः परि षिच्यते हरिः पुनानो वाचं जनयन्नुपावसुः ॥३३॥

द्युलोकको स्वामी र जलको स्वामी हरियो आभा भएको सोम हजारौं धाराले ध्वनि गर्दै यज्ञमार्गबाट पात्रमा प्रतिष्ठित हुन्छ। यज्ञका नजिकै रहन रुचाउने सोमरसले स्तुति निर्माण गराउँछ।

पवमान मह्यर्णो वि धावसि सूरो न चित्रो अव्ययानि पव्यया।
गभस्तिपूतो नृभिरद्रिभिः सुतो महे वाजाय धन्याय धन्वसि ॥३४॥

हे सोमदेव ! तिमी समुद्रतिर जान्छौ। सूर्यदेवजस्तै पूज्य भएर ऊनीले बनेका चाल्नीले छानिएर भाँडामा जम्मा हुन्छौ। ढुङ्गाले कुटेर याजकले निकालेको यो सोमरस धन प्राप्तिका निम्ति ठूला युद्धमा जान्छ।

इषमूर्जं पवमानाभ्यर्षसि श्येनो न वंसु कलशेषु सीदसि।
इन्द्राय मद्वा मद्यो मदः सुतो दिवो विष्टम्भ उपमो विचक्षणः ॥३५॥

हे सोमदेव ! तिमी अन्न र बल बढाउँछौ। श्येन पक्षी आफ्ना गुँडमा पसेर बसेझैं तिमी कलशमा रहन्छौ। द्युलोक धारण गर्ने सोम उदाहरण दिन योग्य सबैको द्रष्टा हो। यो सोमरस इन्द्रदेवका लागि आनन्ददायक र उत्साहवर्द्धक छ।

सप्त स्वसारो अभि मातरः शिशुं नवं जज्ञानं जेन्यं विपश्चितम्।
अपां गन्धर्वं दिव्यं नृचक्षसं सोमं विश्वस्य भुवनस्य राजसे ॥३६॥

आमा वा दिदीबहिनीजस्ता उपकार गर्ने सात नदीबाट निकालेको जल सोमरसमा मिसाउन ल्याइन्छ। समस्त भुवनमा राज्य गर्ने कामनाले देवमानवका द्रष्टाले जल मिश्रित सोमलाई सर्वोच्च पदमा प्रतिष्ठित गर्दछन्।

ईशान इमा भुवनानि वीयसे युजान इन्दो हरितः सुपर्ण्यः।
तास्ते क्षरन्तु मधुमद्घृतं पयस्तव व्रते सोम तिष्ठन्तु कृष्टयः ॥३७॥

हरियो वर्णका, तीव्रगामी अश्वमा सबै लोकमा व्याप्त, जगत्‌का स्वामी हे तेजस्वी सूर्यजस्ता सोमदेव ! मधुर स्निग्ध जलधारामा तिम्रो रस स्थिर रहोस्। हे दिव्य सोम ! तिम्रा प्रेरणाले याजकहरू सत्कर्ममा लागून्।

त्वं नृचक्षा असि सोम विश्वतः पवमान वृषभ ता वि धावसि।
स नः पवस्व वसुमद्धिरण्यवद्वयं स्याम भुवनेषु जीवसे ॥३८॥

हे शक्तिवर्द्धक पवित्र सोमदेव ! तिमी सबैमा व्याप्त साक्षी रूपमा संस्कारित भएर आऊ। तिम्रो कृपाले हामी सबै खालका धनसम्पदाले सम्पन्न सुखी जीवन बाँचौं।

गोवित्पवस्व वसुविद्धिरण्यविद्रेतोधा इन्दो भुवनेष्वर्पितः।
त्वं सुवीरो असि सोम विश्ववित्तं त्वा विप्रा उप गिरेम आसते ॥३९॥

सुनौला सम्पदाले युक्त, पराक्रम बढाउने, सबै भुवनमा व्याप्त, गाईको दुध मिश्रित हे पवित्र सोमदेव ! तिमी सर्वज्ञ, शूरवीर र श्रेष्ठ पथका नियन्ता हौ। सबै ऋत्विक्‌हरू तिम्रो प्रार्थना गर्दछन्।

उन्मध्व ऊर्मिर्वनना अतिष्ठिपदपो वसानो महिषो वि गाहते।
राजा पवित्ररथो वाजमारुहत्सहस्रभृष्टिर्जयति श्रवो बृहत् ॥४०॥

जलमा मिसिएको महान् सोमरस कलशमा जाँदा मधुर धारा र स्तुतिमाथि आउँछन्। उत्तम रथ भएको सोम राजा युद्धमा जाँदा हजारौं किसिमका अन्न जितेर ल्याउँछ।

स भन्दना उदियर्ति प्रजावतीर्विश्वायुर्विश्वाः सुभरा अहर्दिवि।
ब्रह्म प्रजावद्रयिमश्वपस्त्यं पीत इन्दविन्द्रमस्मभ्यं याचतात् ॥४१॥

सोम सबै मानिसको स्वामी, उत्तम प्रजा र सुखदाता हो। यसलाई स्तुतिले रातदिन प्रेरित गर्दछ। हे सोमदेव ! इन्द्रदेवले पान गर्दाखेरि तिमी हाम्रा लागि प्रजायुक्त, धनयुक्त र गृह आदिले युक्त ऐश्वर्य प्रदान गर।

सो अग्रे अह्नां हरिर्हर्यतो मदः प्र चेतसा चेतयते अनु द्युभिः।
द्वा जना यातयन्नन्तरीयते नरा च शंसं दैव्यं च धर्तरि ॥४२॥

ब्रह्ममुहूर्तमा स्तोताले गरेका स्तुतिबाट यो सोम राम्ररी चिनिन्छ। यो हर्षदायक, हरियो आभासम्पन्न सोम दुवै जनालाई प्रयत्नरत गराउँछ र द्युलोक एवं पृथिवीका माझमा स्थापित भएर मानिस र देवताबाट प्रशंसित दिव्य धन, धारणकर्तालाई प्रदान गर्छ।

अञ्जते व्यञ्जते समञ्जते क्रतुं रिहन्ति मधुनाभ्यञ्जते।
सिन्धोरुच्छ्वासे पतयन्तमुक्षणं हिरण्यपावाः पशुमासु गृभ्णते ॥४३।

स्तोता सोमरस गाईका दुधमा विशेष किसिमले मिसाउँछन्। त्यसको स्वाद देवताले लिन्छन्। त्यस सोममा गाईको घिउ र मह मिसाउँछन्। त्यसपछि नदीका पानीमा रहेका सोमलाई स्वर्णले शुद्ध गरेर तेजस्वी रूप प्रदान गर्दछन्।

विपश्चिते पवमानाय गायत मही न धारात्यन्धो अर्षति।
अहिर्न जूर्णामति सर्पति त्वचमत्यो न क्रीडन्नसरद्वृषा हरिः ॥४४॥

हे ऋत्विक्हरू हो ! उच्च विचारशील र शुद्ध सोमको स्तुति गर। यो सोम महान् धाराजस्तै वेगले अन्न प्रदान गर्दछ। सर्पले काँचुली फेरेझैं यसले पुरानो आवरण फेर्छ। शक्तिमान् र हरियो वर्णको सोमरस घोडा खेलेझैं कलशमा पसेर रहन्छ।

अग्रेगो राजाप्यस्तविष्यते विमानो अह्नां भुवनेष्वर्पितः।
हरिर्घृतस्नुः सुदृशीको अर्णवो ज्योतीरथः पवते राय ओक्यः ॥४५॥

प्रगतिशील राजाझैं सोम जलमा मिश्रित भएर प्रशंसित हुन्छ। दिनको मापदण्डजस्तो सोम जलमा रहन्छ। हरियो वर्णको, जल मिश्रित, सुन्दर दर्शनीय र जलमा निवास गर्ने, ज्योतिस्वरूपको रथ भएको सोम धनको भण्डार जस्तै हो।

असर्जि स्कम्भो दिव उद्यतो मदः परि त्रिधातुर्भुवनान्यर्षति।
अंशुं रिहन्ति मतयः पनिप्नतं गिरा यदि निर्णिजमृग्मिणो ययुः ॥४६॥

द्युलोकको आधारस्तम्भका रूपमा रहेका पराक्रमी सोमबाट रस निकाल्दछन्। यो सोम तीन वटा कलशमा रहन्छ। ध्वनि गर्ने सोमको ज्ञानीहरूले स्तुति गर्दछन्। याजकहरू स्तुतिद्वारा तेजस्वी सोम प्राप्त गर्दछन्।

प्र ते धारा अत्यण्वानि मेष्यः पुनानस्य संयतो यन्ति रंहयः।
यद् गोभिरिन्दो चम्वोः समज्यस आ सुवानः सोम कलशेषु सीदसि ॥४७॥

हे शोधित सोम ! ध्वनि गर्ने तिम्रा संयुक्त धाराहरू ऊनीका चाल्नीले परिष्कृत भएर चुहुन्छन्। पात्रमा तिमीलाई पानीसित मिसाएपछि तिमी कलशमा प्रतिष्ठित हुन्छौ।

पवस्व सोम क्रतुवित्र उक्थ्योऽव्यो वारे परि धाव मधु प्रियम्।
जहि विश्वान् रक्षस इन्दो अत्रिणो बृहद्वदेम विदथे सुवीराः ॥४८॥

सबै कर्मको ज्ञान भएका, प्रशंसनीय हे सोमदेव ! हाम्रो यज्ञका लागि रस प्रदान गर। आनन्दवर्द्धक रस प्रदान गर्नका लागि अनश्वर शोधकयन्त्रबाट चाँडै चुहुन थाल। हे सोमदेव ! अर्काको अधिकार मिच्नेको संहार गर। उत्तम वीरले युक्त भएर हामी यज्ञमा स्तुतिद्वारा तिम्रो गुणगान गर्दछौं।

[सूक्त - ८७]

ऋषि - उशना काव्य। देवता - पवमान सोम। छन्द - त्रिष्टुप्।

प्र तु द्रव परि कोशं नि षीद नृभिः पुनानो अभि वाजमर्ष।
अश्वं न त्वा वाजिनं मर्जयन्तोऽच्छा बर्ही रशनाभिर्नयन्ति ॥१॥

हे सोमदेव ! याजकले पवित्र गरेपछि तिमी चाँडै पात्रमा स्थित होऊ र यजमानलाई पोषक तत्त्व प्रदान गर। शक्तिमान् घोडाजस्तो शुद्ध पारेर याजकले तिमीलाई यज्ञमण्डपमा ल्याउँछन्।

स्वायुधः पवते देव इन्दुरशस्तिहा वृजनं रक्षमाणः।
पिता देवानां जनिता सुदक्षो विष्टम्भो दिवो धरुणः पृथिव्याः ॥२॥

उत्तम आयुधयुक्त, शत्रुनाशक, विघ्न हटाउने, विघ्नबाट टाढा राख्ने, पालनकर्ता, दिव्यताको विकास गर्ने, उत्तम बलशाली, दिव्य सोम शोधन गरिन्छ।

ऋषिर्विप्रः पुरएता जनानामृभुर्धीर उशना काव्येन।
स चिद्विवेद निहितं यदासामपीच्यं गुह्यं नाम गोनाम् ॥३॥

नेतृत्व प्रदान गर्ने, प्रखर, परम ज्ञानी, धैर्यवान् उशना ऋषिले प्रयास गरेर गाईमा गोप्य रूपले बसेको सोम फेला पारेका छन्।

एष स्य ते मधुमाँ इन्द्र सोमो वृषा वृष्णे परि पवित्रे अक्षाः।
सहस्रसाः शतसा भूरिदावा शश्वत्तमं बर्हिरा वाज्यस्थात् ॥४॥

हे इन्द्रदेव ! बलवर्द्धक तिम्रो सोम मधुर र वीर्यवान् बनेर शोधक यन्त्रबाट निस्कन्छ। हजारौं वा सयौं किसिमका प्रचुर धन प्रदान गर्ने शक्तिसम्पन्न सोम निरन्तर सम्पन्न हुने यज्ञमा गएर स्थित हुन्छ।

एते सोमा अभि गव्या सहस्रा महे वाजायामृताय श्रवांसि।
पवित्रेभिः पवमाना असृग्रञ्छ्रवस्यवो न पृतनाजो अत्याः ॥५॥

अन्नको कामना गर्नेहरूले शत्रु विजय गर्नका लागि अश्व अगाडि बढाएभैं गाईका दुधमा मिसिएको हजारौं किसिमको अन्न प्रदान गर्ने सोम चाल्नीबाट शोधित भइरहेको छ। अमृतजस्तो सोमरस प्रचुर मात्रामा अन्न प्रदान गर्नका लागि तयार भएको छ।

परि हि ष्मा पुरुहूतो जनानां विश्वासरद्भोजना पूयमानः।
अथा भर श्येनभृत प्रयांसि रयिं तुञ्जानो अभि वाजमर्ष ॥६॥

मानिसलाई हरेक किसिमका भोज्य पदार्थ प्रदान गर्नका लागि ज्ञानीहरूले प्रशंसा गरेको परिष्कृत सोमरस यज्ञस्थलमा आउँछ। श्येन पक्षीले ल्याएका हे सोमरस ! तिमी धन प्रदान गर्दै प्रचुर मात्रामा अन्न प्रदान गर।

एष सुवानः परि सोमः पवित्रे सर्गो न सृष्टो अदधावदर्वा।
तिग्मे शिशानो महिषो न शृङ्गे गा गव्यन्नभि शूरो न सत्वा ॥७॥

बन्धनबाट मुक्त भएपछि वेगवान् घोडा कुदेभैं रस निकाल्दा शोधनयन्त्रमा सोमरस दौडन्छ। सिँगाले तिखा सिङ अभै तिखारेभैं यो सोमरस गाईले युक्त हुने विचारले आफ्नो स्थानमा जान्छ।

एषा ययौ परमादन्तरद्रेः कूचित्सतीरूर्वे गा विवेद।
दिवो न विद्युत्स्तनयन्त्यभ्रैः सोमस्य ते पवत इन्द्र धारा ॥८॥

सोमको धारो गतिला ठाउँबाट छुटेको हुन्छ। पर्वत वा मेघबाट निस्केर अन्य प्रदेश चहार्दै गाई भएका ठाउँमा पुग्छ। बादलबाट प्रेरित भएर द्युलोकबाट विद्युत्जस्तो ध्वनि गर्दै सोमरसको धारा इन्द्रदेवका लागि प्रवाहित हुन्छ।

उत स्म राशिं परि यासि गोनामिन्द्रेण सोम सरथं पुनानः।
पूर्वीरिषो बृहतीर्जीरदानो शिक्षा शचीवस्तव ता उपष्टुत् ॥९॥

हे सोमदेव ! शोधित हुँदै गर्दा गाईको समूहका नजिकमा पुग्दछौ। तिमी इन्द्रदेवका रथमा उनीसँगै बसेर तुरुन्त दानको कामनाले स्तुत्य धन प्रचुर मात्रामा प्रदान गर। हे शक्तिमान् सोमदेव ! त्यो अन्न तिम्रै हो।

## [सूक्त - ८८]

**ऋषि** - उशना काव्य। **देवता** - पवमान सोम। **छन्द** - त्रिष्टुप्।

अयं सोम इन्द्र तुभ्यं सुन्वे तुभ्यं पवते त्वमस्य पाहि।
त्वं ह यं चकृषे त्वं ववृष इन्दुं मदाय युज्याय सोमम् ॥१॥

हे इन्द्रदेव ! तिम्रा लागि सोमरस निकालेर शोधित गरिन्छ। यो पवित्र सोमरस तिमी पान गर। यसका उत्पादक तिमी नै हौ। यस दीप्तिमान् सोमका योगले आनन्द प्राप्त गर्नका लागि तिमी ग्रहण गर।

स ईं रथो न भुरिषाडयोजि महः पुरूणि सातये वसूनि।
आदीं विश्वा नहुष्याणि जाता स्वर्षाता वन ऊर्ध्वा नवन्त ॥२॥

महान् इन्द्रदेव मनग्गे भारी बोकको रथजस्तै हामीलाई मनग्गे वैभव प्रदान गर्नका लागि खटिएका छन्। उनले हाम्रा विरोधी शत्रु युद्धमा विनाश गरिदिन्छन्।

वायुर्न यो नियुत्वाँ इष्टयामा नासत्येव हव आ शम्भविष्ठः।
विश्ववारो द्रविणोदाइव त्मन्पूषेव धीजवनोऽसि सोम ॥३॥

वायुरूपी सोम स्वेच्छाले गमन गर्ने घोडाजस्तै छ, अश्विनीकुमारजस्तै सोम आमन्त्रण पाउना साथ आउँछ र उही सोम धनदाता स्वामीजस्तै आफूलाई योग्य ठान्दछ। हे सोमदेव ! तिमी पूषादेवजस्तै भएर मनका वेगले यज्ञस्थलमा आऊ।

इन्द्रो न यो महा कर्माणि चक्रिर्हन्ता वृत्राणामसि सोम पूर्भित्।
पैद्वो न हि त्वमहिनाम्नां हन्ता विश्वस्यासि सोम दस्योः ॥४॥

हे सोमदेव ! तिमी इन्द्रदेवजस्तै महान् कार्य गर्ने र दुर्विचारलाई शत्रुजस्तै नष्ट गर्ने हौ। तिमी शत्रुको सहर ध्वस्त पार्दछौ। हे सोमदेव ! तिमी सबै शत्रुको संहार गराउँछौ। त्यसैले अश्वकै जस्तो गरी तिमी अहि नामको शत्रु नष्ट गर।

अग्निर्न यो वन आ सृज्यमानो वृथा पाजांसि कृणुते नदीषु।
जनो न युध्वा महत उपब्दिरियर्ति सोमः पवमान ऊर्मिम् ॥५॥

सोम वनमा उत्पन्न भएर वनमै उत्पन्न भएका अग्निदेवले बल प्रदर्शन गरेभैँ आफ्नो सामर्थ्य प्रदर्शित गर्दछ। शूरवीरजस्तै ठूला शत्रुसित सङ्घर्ष गर्दछ। यस शोधित सोमले पनि रसका धारालाई प्रेरित गर्दछ।

एते सोमा अति वाराण्यव्या दिव्या न कोशासो अभ्रवर्षाः।
वृथा समुद्रं सिन्धवो न नीचीः सुतासो अभि कलशाँ असृग्रन् ॥६॥

बादलले गरेका वर्षाबाट प्रवाहित नदी स्वाभाविक रूपले समुद्रमा पुगेभैँ जलमिश्रित सोम पनि दिव्य कोशमा जान्छ। यस सोमरसलाई अविनाशी अथवा ऊनका चाल्नीले छानेर शोधित गरिन्छ।

शुष्मी शर्धो न मारुतं पवस्वानऽभिशस्ता दिव्या यथा विट्।
आपो न मक्षू सुमतिर्भवा नः सहस्राप्साः पृतनाषाण्न यज्ञः ॥७।

हे बलशाली सोमदेव ! तिमी वायुले भैँ हामीलाई बल प्रदान गर। त्यसले गर्दा असल प्रजा पीडित हुँदैनन्। ज्ञानी मानिसजस्तै हामी पनि चाँडै बुद्धिमान् होऔँ। अनेकौँ रूप भएका हे सोमदेव ! युद्धमा विजय प्राप्त गर्ने इन्द्रदेवजस्तै तिमी यज्ञमा पूजित होऊ।

राज्ञो नु ते वरुणस्य व्रतानि बृहद्गभीरं तव सोम धाम।
शुचिष्ट्वमसि प्रियो न मित्रो दक्षाय्यो अर्यमेवासि सोम ॥८॥

हे सोमदेव ! तिमी श्रेष्ठ राजा हौ, हामी तिम्रो नियम पालना गर्दछौँ। तिमी महान् तेजस्वी र गम्भीर छौ। तिमी मित्र देवताजस्तै पवित्र छौ र अर्यमाजस्तै पूज्य छौ।

[सूक्त - ८९]

ऋषि - उशना काव्य। देवता - पवमान सोम। छन्द - त्रिष्टुप्।

प्रो स्य वह्निः पथ्याभिरस्यान्दिवो न वृष्टिः पवमानो अक्षाः।
सहस्रधारो असदन्न्यस्मे मातुरुपस्थे वन आ च सोमः ॥१॥

आकाशबाट वर्षा भएभैँ सोम प्रवाहित हुन्छ र अगाडि बढ्दछ। विभिन्न मार्गबाट गमन गर्ने यो सोमरस अनेकौँ धारामा हामीलाई प्राप्त होस्।

राजा सिन्धूनामवसिष्ट वास ऋतस्य नावमारुहद्रजिष्ठाम्।
अप्सु द्रप्सो वावृधे श्येनजूतो दुह ईं पिता दुह ईं पितुर्जाम् ॥२॥

जलको राजा सोम गाईको दुधमा निवास गर्दछ। श्येन पक्षीले ल्याएको सोम जलमा मिसिएर सत्यरूपी नौकामा आसीन हुँदै गतिशील हुन्छ। द्युलोकबाट उत्पन्न हुने सोमरस याज्ञिकहरूले निकाल्दछन्।

सिंहं नसन्त मध्वो अयासं हरिमरुषं दिवो अस्य पतिम्।
शूरो युत्सु प्रथमः पृच्छते गा अस्य चक्षसा परि पात्युक्षा ॥३॥

मधुर जललाई प्रेरित गर्ने, शत्रुनाशक, प्रकाशक, द्युलोकका पालक, हरियो आभासम्पन्न सोमरस याजकहरूले निकाल्छन्। युद्धकुशल शूरजस्ता यस सोमरसले सबैभन्दा पहिले गाईको कुशलता सोध्छ। सोमका सामर्थ्यले नै इन्द्रदेव सबैको रक्षा गर्दछन्।

मधुपृष्ठं घोरमयासमश्वं रथे युञ्जन्त्युरुचक्र ऋष्वम्।
स्वसार ईं जामयो मर्जयन्ति सनाभयो वाजिनमूर्जयन्ति ॥४॥

उत्तम पिठ्युँ भएको, मधुर सोम देख्नमा सुन्दर, गमनशील र भयङ्कर छ। यज्ञरूपी रथमा हामी सोमलाई अश्वभैँ नियुक्त गर्छौं। दिदीबहिनीहरू यसलाई सफा गर्दछन्। समान केन्द्र भएकाहरू यसलाई बलियो बनाउँछन्।

चतस्र ईं घृतदुहः सचन्ते समाने अन्तर्धरुणे निषत्ताः।
ता ईमर्षन्ति नमसा पुनानास्ता ईं विश्वतः परि षन्ति पूर्वीः ॥५॥

घिउको दोहन गर्ने चार गाई सोमसित सम्बन्धित छन्। एकै किसिमका आश्रयमा रहनेहरूले सोम फेला पार्दछन्। नमस्कारपूर्वक पवित्र हुने अनेकौं गाई त्यसलाई सबै तिरबाट घेर्दछन्।

विष्टम्भो दिवो धरुणः पृथिव्या विश्वा उत क्षितयो हस्ते अस्य।
असत्त उत्सो गृणते नियुत्वान्मध्वो अंशुः पवत इन्द्रियाय ॥६॥

सोम द्युलोक र पृथ्वीको आधार हो। समस्त मानव सोमकै हातमा छन्। इन्द्रदेवलाई अर्पित गर्नका लागि मधुर तथा उत्साहवर्द्धक सोमको स्तुति गरिन्छ। हे सोम ! तिमी शक्तिका स्वामी हौ।

वन्वन्नवातो अभि देववीतिमिन्द्राय सोम वृत्रहा पवस्व।
शग्धि महः पुरुश्चन्द्रस्य रायः सुवीर्यस्य पतयः स्याम ॥७॥

हे अजेय सोमदेव ! यज्ञस्थलमा गएर वृत्र वध गर्ने इन्द्रदेवका निम्ति तिमी रस प्रदान गर। उत्तम पराक्रमका स्वामी बन्न हामीलाई तेजस्वी धन प्रचुर मात्रामा प्रदान गर।

[सूक्त - ९०]

**ऋषि** - वसिष्ठ मैत्रावरुणि। **देवता** - पवमान सोम। **छन्द** - त्रिष्टुप्।

प्र हिन्वानो जनिता रोदस्यो रथो न वाजं सनिष्यन्नयासीत्।
इन्द्रं गच्छन्नायुधा संशिशानो विश्वा वसु हस्तयोरादधानः ॥१॥

द्युलोक र पृथिवी उत्पन्न गर्ने, शस्त्रको प्रखरता बढाउने देवताका पोषक सोमदेव वेगपूर्वक इन्द्रदेवका नजिकै पुगे। मानौं विश्वको अपार वैभव हामी याजकलाई प्रदान गर्नका लागि उनी आएका हुन्।

अभि त्रिपृष्ठं वृषणं वयोधामाङ्गूषाणामवावशन्त वाणीः।
वना वसानो वरुणो न सिन्धून्वि रत्नधा दयते वार्याणि ॥२॥

ऋत्विक्‌का वाणीले तीनै स्थानमा निवास गर्ने, खोजेको कुरो पूरा गराउने अन्नदाता सोमलाई ठूलो र तेजस्वी स्वरले स्तुति गर्दछ। जलमा रहने वरुणदेवजस्तै पानीमा मिसिएका सोमदेवले स्तोतालाई रत्न र धन प्रदान गर्दछन्।

शूरग्रामः सर्ववीरः सहावाञ्जेता पवस्व सनिता धनानि।
तिग्मायुधः क्षिप्रधन्वा समत्स्वषाळ्हः साह्वान् पृतनासु शत्रून् ॥३॥

हे सोमदेव ! तिमी वीरको समूह र अनेकौं वीरका लागि प्रेरक, शक्तिशाली, विजेता, धनप्रदाता, आयुधले युक्त, अति तीव्र गति भएका शस्त्रप्रहारक, सङ्ग्राममा अदम्य र युद्धमा शत्रु पराजित गराउने हौ।

उरुगव्यूतिरभयानि कृण्वन्त्समीचीने आ पवस्वा पुरन्धी।
अपः सिषासन्नुषसः स्व१र्गाः सं चिक्रदो महो अस्मभ्यं वाजान् ॥४॥

विस्तृत पथयुक्त, निर्भय बनाउने, आकाश र पृथ्वी जोड्ने हे सोमदेव ! तिमी अवतरित होऊ। जल, उषा, सूर्यको किरण र गाईबाट पोषित तिमी शब्दनाद गर्दै हामीलाई अपार ऐश्वर्य प्रदान गर।

मत्सि सोम वरुणं मत्सि मित्रं मत्सीन्द्रमिन्दो पवमान विष्णुम्।
मत्सि शर्धो मारुतं मत्सि देवान्मत्सि महामिन्द्रमिन्दो मदाय ॥५॥

हे पवित्र सोमदेव ! तिमी वरुणदेव, मित्रदेव, इन्द्रदेव, विष्णुदेव, मरुत्‌देव र सबै देवतासँगै महान् सनातन इन्द्रदेवलाई आनन्द प्रदान गर्दछौ।

एवा राजेव क्रतुमाँ अमेन विश्वा घनिघ्नद् दुरिता पवस्व।
इन्दो सूक्ताय वचसे वयो धा यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

यज्ञ गर्ने राजाको जस्तै स्तुति गरिने हे सोमदेव ! तिमी सबै दुष्टको विनाश गर्दै रस प्रदान गर र अन्न प्रदान गर्दै कल्याणकारी ढङ्गले हाम्रो संरक्षण गर। यसका लागि नै स्तोत्रले तिम्रो स्तुति गर्दछौं। ।

[सूक्त - ९१]

ऋषि – कश्यप मारीच। देवता – पवमान सोम। छन्द – त्रिष्टुप्।

**असर्जि वक्वा रथ्ये यथाजौ धिया मनोता प्रथमो मनीषी।**
**दश स्वसारो अधि सानो अव्येऽजन्ति वह्निं सदनान्यच्छ ॥१॥**

अश्वलाई युद्धमा प्रेरित गरेझैं सबैलाई प्रिय लाग्ने, सर्वप्रथम स्तुत्य सोम शब्द गर्दै यज्ञकर्ममा प्रेरित गरिन्छ। दस दिदीबहिनी सोमलाई अविनाशी शोधनयन्त्रबाट निस्केर आफ्ना स्थानमा जानका लागि प्रेरित गर्दछन्।

**वीती जनस्य दिव्यस्य कव्यैरधि सुवानो नहुष्येभिरिन्दुः।**
**प्र यो नृभिरमृतो मर्त्येभिर्मर्मृजानोऽविभिर्गोभिरद्भिः ॥२॥**

विद्वान्हरूले शोधन गरेको सोमरस देवताले पान गर्नका लागि गमन गर्दछ। यो अविनाशी सोम याजकले परिष्कृत गरेका हुन्। ऊनीले बनेका चाल्नीले शुद्ध भएर गाईको दुध र जलमा मिसिएको सोमरस यज्ञस्थलमा पुग्दछ।

**वृषा वृष्णे रोरुवदंशुरस्मै पवमानो रुशदीर्ते पयो गोः।**
**सहस्रमृक्वा पथिभिर्वचोविदध्वस्मभिः सूरो अण्वं वि याति ॥३॥**

ध्वनिसँगै परिष्कृत रूपमा वर्षा गराउने बलशाली सोम इन्द्रदेवले पान गर्नका लागि तेज प्रदर्शित गर्दछ। त्यसलाई गाईका दुधमा मिसाइन्छ। स्तुत्य, श्रेष्ठ, पराक्रमी सोम हिंसाबाट रहित हजारौं प्वाल भएका चाल्नीमा शोधित हुन्छ।

**रुजा दृळ्हा चिद्रक्षसः सदांसि पुनान इन्द ऊर्णुहि वि वाजान्।**
**वृश्चोपरिष्टात्तुजता वधेन ये अन्ति दूरादुपनायमेषाम् ॥४॥**

हे सोमदेव ! तिमी असुरका किल्ला नष्ट गर। परिष्कृत भएर उनको बल र अन्न पनि नाश गर। माथिबाट आउने असुरका नाइके हाम्रा नजिकै वा टाढा जहाँसुकै भए पनि संहार गरेर निमिट्यान्न पार।

**स प्रत्नवन्नव्यसे विश्ववार सूक्ताय पथः कृणुहि प्राचः।**
**ये दुष्षहासो वनुषा बृहन्तस्तांस्ते अश्याम पुरुकृत्पुरुक्षो ॥५॥**

सबैका स्तुत्य हे सोमदेव ! तिमी पहिलेका सूक्तझैं नयाँ सूक्त ग्रहण गर। हे बहुकर्मा, स्तुत्य सोमदेव ! तिम्रो शक्ति शत्रुका लागि अजेय र असह्य हुन्छ। शत्रुनाशक त्यो सामर्थ्य तिमीबाट हामी पाऔं।

**एवा पुनानो अपः स्वर्गा अस्मभ्यं तोका तनयानि भूरि।**
**शं नः क्षेत्रमुरु ज्योतींषि सोम ज्योङ्नः सूर्यं दृशये रिरीहि ॥६॥**

हे सोमदेव ! यस किसिमले परिष्कृत हुँदै हामीलाई स्वर्ग, गाई, सन्तति र जल प्रदान गर। हे सोमदेव ! हाम्रा खेतलाई सुखदायी बनाउँदै तिमी यी नक्षत्र विस्तार गर। हामी चिरकालसम्म सूर्यदेवको दर्शन गर्न सकौं।

[सूक्त - ९२]

ऋषि – कश्यप मारीच। देवता – पवमान सोम। छन्द – त्रिष्टुप्।

**परि सुवानो हरिरंशुः पवित्रे रथो न सर्जि सनये हियानः।**
**आपच्छ्लोकमिन्द्रियं पूयमानः प्रति देवाँ अजुषत प्रयोभिः ॥१॥**

हरियो वर्णको सोम शोधक उपकरणबाट निस्कन्छ। पवित्र हुँदै यस सोमले स्तुति सुन्दछ। यो सोम हव्यका रूपमा इन्द्र आदि देवताहरूलाई खुसी पार्नका लागि रथझैं उनीहरूतिर प्रेरित हुन्छ।

**अच्छा नृचक्षा असरत्पवित्रे नाम दधानः कविरस्य योनौ।**
**सीदन् होतेव सदने चमूषूपेमग्मन्नृषयः सप्त विप्राः ॥२॥**

दिव्य द्रष्टा ज्ञानी सोमलाई यज्ञस्थलमा पानीसित मिसाएर चाल्नीले राम्ररी छानिन्छ। होताझैं यो सोम यज्ञस्थलका असल पात्रमा प्रतिष्ठित रहन्छ। सात ज्ञानवान् याजक ऋषि स्तोत्र उच्चारण गर्दै सोमका नजिकै बस्दछन्।

प्र सुमेधा गातुविद्विश्वदेवः सोमः पुनानः सद एति नित्यम्।
भुवद्विश्वेषु काव्येषु रन्ताऽनु जनान्यतते पञ्च धीरः ॥३॥

उत्तम मार्गको ज्ञाता, प्रकाशमय, ज्ञानी, शोधित सोम सधैँभरि कलशमा स्थापित हुन्छ। समस्त स्त्रोत्र ग्रहण गर्दै यो धैर्यवान् सोम पाँच थटाको अनुकूल भएर तिनीहरूको उन्नतिको मार्ग तयार गरिदिन्छ।

तव त्ये सोम पवमान निण्ये विश्वे देवास्त्रय एकादशासः।
दश स्वधाभिरधि सानो अव्ये मृजन्ति त्वा नद्यः सप्त यह्वीः ॥४॥

हे पवमान सोमदेव ! द्युलोकमा तेत्तीस विश्वेदेवले तिमीलाई अविनाशी रूपमा शोधन प्रक्रियाले दसै तिरबाट शुद्ध गर्दछन्। सात विशाल जलधाराबाट तिम्रो मार्जन गर्दछन्।

तन्नु सत्यं पवमानस्यास्तु यत्र विश्वे कारवः संनसन्त।
ज्योतिर्यदह्ने अकृणोदु लोकं प्रावन्मनुं दस्यवे करभीकम् ॥५॥

सबै कर्ताहरू उचित रूपमा एकजुट भएका ठाउँमा यस सत्यस्वरूप पवमान सोमको निवास छ। दिउँसोको प्रकाश उत्पन्न गर्ने सोमका ज्योतिले मानिसलाई संरक्षण प्रदान गर्दछ। दस्यु र दुष्टका लागि सोम आफ्ना तेजलाई विनाशक बनाउँछ।

परि सद्मेव पशुमान्ति होता राजा न सत्यः समितीरियानः।
सोमः पुनानः कलशाँ अयासीत्सीदन्मृगो न महिषो वनेषु ॥६॥

पशु आदिले समृद्ध घरमा होता गएझैं असल कर्म गर्ने राजा सभागृहमा गएझैं र भैँसी पानीमा पसेझैं शोधित सोम कलशभित्र पस्छ।

[सूक्त - ९३]

ऋषि - नोधा गौतम। देवता - पवमान सोम। छन्द - त्रिष्टुप्।

साकमुक्षो मर्जयन्त स्वसारो दश धीरस्य धीतयो धनुत्रीः।
हरिः पर्यद्रवज्जाः सूर्यस्य द्रोणं ननक्षे अत्यो न वाजी ॥१॥

कर्म गर्ने औँलाले सोमलाई पवित्र गर्दछन्। दस औँलाले वीर्यवान् सोम हल्लाउँछन्। हरियो आभासम्पन्न सोमरस सबै तिरबाट तेज गतिले कुद्दै अश्वझैं कलशमा पस्छ।

सं मातृभिर्न शिशुर्वावशानो वृषा दधन्वे पुरुवारो अद्भिः।
मर्यो न योषामभि निष्कृतं यन्त्सं गच्छते कलश उस्रियाभिः ॥२॥

देवताका इष्ट, वरणीय शक्तिशाली सोम माताले शिशुलाई वा पुरुषले स्त्रीलाई अँगालो हालेझैं जलसित मिसिन्छ। संस्कार गर्ने ठाउँमा फेरि गाईका दुधमा मिसिन्छ।

उत प्र पिप्य ऊधरघ्न्याया इन्दुर्धाराभिः सचते सुमेधाः।
मूर्धानं गावः पयसा चमूष्वभि श्रीणन्ति वसुभिर्न निक्तैः ॥३॥

गाईका लागि उचित पोषण प्रदान गर्ने वनस्पतिमा पसेर सोमले दुधको अपेक्षा पूरा गराउँछ। उत्तम मेधावी सोम दुधका धारामा मिसिन्छ। मानिसले आफूलाई कपडाले छोपेझैं कलशमा रहेका सोमलाई गाईले आफ्ना दुधले आवृत्त गराउँछन्।

स नो देवेभिः पवमान रदेन्दो रयिमश्विनं वावशानः।
रथिरायतामुशती पुरन्धिरस्मद्र्यगा दावने वसूनाम् ॥४॥

हे सोम ! हाम्रो इच्छा पूर्ति गर्दै अश्वयुक्त दैवी धन हामीलाई प्रदान गर। तिमी महारथीले धारण गर्ने बुद्धि हामीलाई प्रदान गर। त्यस बुद्धिले हामी आफ्नो धन उचित किसिमले कार्यमा लगाउने साहस गर्न सकौं।

नू नो रयिमुप मास्व नृवन्तं पुनानो वाताप्यं विश्वश्चन्द्रम्।
प्र वन्दितुरिन्दो तार्यायुः प्रातर्मक्षू धियावसुर्जगम्यात् ॥५॥

हे शुद्ध गरिएका सोम ! हामी स्तोतालाई सन्ततियुक्त आनन्ददायी र शीतल धन एवं दीर्घायु प्रदान गर। बुद्धियुक्त धन प्रदान गर्ने हे सोमदेव ! हाम्रा यज्ञमा चाँडै आऊ।

[सूक्त - ९४]

ऋषि - कण्व। देवता - पवमान सोम। छन्द - त्रिष्टुप्।

**अधि यदस्मिन्वाजिनीव शुभः स्पर्धन्ते धियः सूर्ये न विशः।**
**अपो वृणानः पवते कवीयन्व्रजं न पशुवर्धनाय मन्म ॥१॥**

सोमलाई अश्वभैँ शुभ संस्कारले सुसज्जित बनाउनका निम्ति सूर्यलाई किरणले सजाएझैँ संस्कारित बुद्धिले स्पर्धा गर्दा पशुको वृद्धि गर्ने चरनजस्तो हुँदै यो क्रान्तदर्शी सोम कलशमा सञ्चरण गर्दछ।

**द्विता व्यूर्ण्वन्नमृतस्य धाम स्वर्विदे भुवनानि प्रथन्त।**
**धियः पिन्वानाः स्वसरे न गाव ऋतायन्तीरभि वावश्र इन्दुम् ॥२॥**

अमृतजस्तो स्थान प्राप्त गर्नका लागि दुई किसिमबाट अफ्नो तेज यस सोमले प्रकट गर्दछ। आनन्दमय सोमका लागि सबै भुवन विस्तृत हुन्छन्। यज्ञको रहर गर्ने स्तोताका वाणीले सोमका लागि गोठमा गाई कराएझैँ ध्वनि निकाल्दछ।

**परि यत्कविः काव्या भरते शूरो न रथो भुवनानि विश्वा।**
**देवेषु यशो मर्ताय भूषन्दक्षाय रायः पुरुभूषु नव्यः ॥३॥**

युद्धमा शूरवीरको आभूषण रथ भएझैँ दैवी धनले मानिसलाई सुहाउँदो पार्दछ। ज्ञानीजनले सोमको स्तोत्र सुनाएका बेला यज्ञमा धनको वृद्धि हुन्छ।

**श्रिये जातः श्रिय आ निरियाय श्रियं वयो जरितृभ्यो दधाति।**
**श्रियं वसाना अमृतत्वमायन्भवन्ति सत्या समिथा मितद्रौ ॥४॥**

सम्पत्ति बढाइदिने सोम यज्ञमा धन प्रदान गर्न आउँछ। उही सोम स्तोतालाई धनधान्य प्रदान गर्दछ। स्तुति गर्ने शोभायमान याजकले अमरत्व प्राप्त गर्दछ। नियमित अभ्यास गर्ने वीर सङ्ग्राममा सत्यको पक्षमा रहन्छ।

**इषमूर्जमभ्यर्षाश्वं गामुरु ज्योतिः कृणुहि मत्सि देवान्।**
**विश्वानि हि सुषहा तानि तुभ्यं पवमान बाधसे सोम शत्रून् ॥५॥**

हे विचित्र सोमदेव ! हामीलाई अन्न र बल बढाउने रस प्रदान गर। प्रकाश प्रदान गर्ने सूर्यको महान् किरण, अश्व र गाई देऊ। सबै राक्षस तिमीसित सजिलै परास्त हुन्छन्। त्यसैले शत्रुमाथि विजय प्राप्त गरेर सबै देवतालाई हर्षित गर।

[सूक्त - ९५]

ऋषि - प्रस्कण्व काण्व। देवता - पवमान सोम। छन्द - त्रिष्टुप्।

**कनिक्रन्ति हरिरा सृज्यमानः सीदन्वनस्य जठरे पुनानः।**
**नृभिर्यतः कृणुते निर्णिजं गा अतो मतीर्जनयत स्वधाभिः ॥१॥**

मानिसले पेलेर रस निकाल्ने, हरियो आभा भएको सोम पवित्र छ। गाईको दुध मिसेको काठका भाँडाको सोमरस शब्द गर्दै तल खस्दा याजकहरू यसको स्तुति गर्दछन्।

**हरिः सृजानः पथ्यामृतस्येयर्ति वाचमरितेव नावम्।**
**देवो देवानां गुह्यानि नामाविष्कृणोति बर्हिषि प्रवाचे ॥२॥**

नाविकले नौका चलाएझैँ पेलेर तयार पारेको हरियो आभासम्पन्न सोमले यज्ञको मार्ग निर्देश गर्न स्तोत्रलाई प्रेरित गर्दछ। तेजस्वी सोमले देवताका गोप्य नामको बयान गर्छ।

**अपामिवेदूर्मयस्तर्तुराणाः प्र मनीषा ईरते सोममच्छ।**
**नमस्यन्तीरुप च यन्ति सं चा च विशन्त्युशतीरुशन्तम् ॥३॥**

पानीको द्रुतगामी तरङ्गझैँ बोल्न हतारिने स्तोता चाँडै सोमका नजिक स्तुति पुऱ्याउँछन्। उन्नतिको कामना गर्ने विनम्र भावको स्तुति उसलाई रुचाउने सोमका नजिकै जान्छ र उसैमा समाहित हुन्छ।

**तं मर्मृजानं महिषं न सानावंशुं दुहन्त्युक्षणं गिरिष्ठाम्।**
**तं वावशानं मतयः सचन्ते त्रितो बिभर्ति वरुणं समुद्रे ॥४॥**

शोधन गर्ने याजक पर्वतमा उत्पन्न भएका सोमबाट भैँसी दुहेझैँ रस निकाल्छन्। तीनै लोकमा व्याप्त शत्रुनाशक सोमलाई अन्तरिक्षले धारण गर्छ, यसैको स्तुति गरिन्छ।

इष्यन्वाचमुपवक्तेव होतुः पुनान इन्दो वि ष्या मनीषाम्।
इन्द्रश्च यत्क्षयथः सौभगाय सुवीर्यस्य पतयः स्याम ॥५॥

हे शोधित सोम ! स्तोतालाई प्रेरित गर्ने याज्ञिकको झैँ हाम्रा बुद्धिलाई यज्ञका निम्ति प्रेरित गर। इन्द्रदेवसित तिमी रहँदा हामी श्रेष्ठ पराक्रमी हुने सौभाग्य प्राप्त गर्दछौँ।

[सूक्त - ९६]

ऋषि - प्रतर्दन दैवोदासी। देवता - पवमान सोम। छन्द - त्रिष्टुप्।

प्र सेनानीः शूरो अग्रे रथानां गव्यन्नेति हर्षते अस्य सेना।
भद्रान्कृण्वन्निन्द्रहवान्त्सखिभ्य आ सोमो वस्त्रा रभसानि दत्ते ॥१॥

शूरवीर सेनानायकले शत्रुका गाई प्राप्त गर्ने विचार गर्दै रथ अगाडि लिएर जान्छ। यस कार्यले यिनको सेना खुसी हुन्छ। याजकका लागि सोमले मित्र इन्द्रदेवको प्रार्थना मङ्गलमय बनाउँदै तेजस्विता धारण गर्दछन्।

समस्य हरिं हरयो मृजन्त्यश्वहयैरनिशितं नमोभिः।
आ तिष्ठति रथमिन्द्रस्य सखा विद्वाँ एना सुमतिं यात्यच्छ ॥२॥

याजकहरू हरियो आभा भएको सोमरस शोधन गर्दछन्। यो सोमरस रथरूपी पात्रमा स्तुतिले गर्दा हर्षित भएर बसेको छ। यो ज्ञानी सोम मित्र इन्द्रदेवसित यज्ञका साधनका रूपमा असल स्तोताका नजिकैं पुग्दछ।

स नो देवा देवताते पवस्व महे सोम प्सरस इन्द्रपानः।
कृण्वन्नपो वर्षयन्द्यामुतेमामुरोरा नो वरिवस्या पुनानः ॥३॥

हे दिव्य सोमदेव ! हामीले यस दैवी यज्ञबाट महान् ऐश्वर्य प्राप्त गर्न इन्द्रदेवले पान गर्न योग्य रस प्रदान गर। आकाशबाट बर्सिने जलसित मिसिएर विशाल अन्तरिक्षबाट आउने हे सोमदेव ! शोधित भएर हामीलाई ऐश्वर्य प्रदान गर।

अजीतयेऽहतये पवस्व स्वस्तये सर्वतातये बृहते।
तदुशन्ति विश्व इमे सखायस्तदहं वश्मि पवमान सोम ॥४॥

हे सोमदेव ! शत्रु पराजित गर्नका लागि, प्रजालाई दुःखी नदिनका लागि, सुखको वृद्धि गर्नका लागि र महान् यज्ञका लागि हामीलाई शुद्ध सोमरस प्रदान गर। हे पवित्र सोमदेव ! हामी र हाम्रा सबै मित्र तिमीबाट यही कामना गर्दछौँ।

सोमः पवते जनिता मतीनां जनिता दिवो जनिता पृथिव्याः।
जनिताग्नेर्जनिता सूर्यस्य जनितेन्द्रस्य जनितोत विष्णोः। ५॥

द्युलोक, पृथिवी, अग्नि, सूर्य, इन्द्र, विष्णु र असल बुद्धिका लागि उत्पादनशील सोम शुद्ध गरिँदै छ।

ब्रह्मा देवानां पदवीः कवीनामृषिर्विप्राणां महिषो मृगाणाम्।
श्येनो गृध्राणां स्वधितिर्वनानां सोमः पवित्रमत्येति रेभन् ॥६॥

देवता, कवि, विप्र, पशु, पक्षी र हिंसा गर्नेका बीचमा विभिन्न रूपमा व्याप्त रहेको दिव्य सोम संस्कारित हुँदै ध्वनिसँगै कलशमा जम्मा हुँदै छ।

प्रावीविपद्वाच ऊर्मिं न सिन्धुर्गिरः सोमः पवमानो मनीषाः।
अन्तः पश्यन्वृजनेमावराण्या तिष्ठति वृषभो गोषु जानन् ॥७॥

पवित्र हुन लागेका सोमले प्रवाहित नदीका लहरबाट उठेको मधुर ध्वनिजस्तै सुन्दर ध्वनि गरिरहेको छ। अन्तर्दृष्टिमा लुकेको शक्ति चिनेको हुनाले सोमले कहिल्यै नघट्ने सामर्थ्य प्राप्त गर्दछ।

स मत्सरः पृत्सु वन्वन्नवातः सहस्ररेता अभि वाजमर्ष।
इन्द्रायेन्दो पवमानो मनीष्यं१ शोरूर्मिमीरय गा इषण्यन् ॥८॥

हे आनन्दवर्द्धक सोमदेव ! सूर्यदेवजस्तै तेजस्वी र हजारौँ बलले युक्त भएर युद्धमा शत्रुका बलमाथि आक्रमण गर्दै तिनको विनाश गर। हे शोधित हुँदै गरेका ज्ञानी सोमदेव ! तिमी इन्द्रदेवका लागि स्तुति प्रेरित गर्दै गाईका दुधमा मिश्रित सोमरसको धारा प्रवाहित गर।

परि प्रियः कलशे देववात इन्द्राय सोमो रण्यो मदाय।
सहस्रधारः शतवाज इन्दुर्वाजी न सप्तिः समना जिगाति ॥९॥

देवताका प्रिय रमणीय सोम इन्द्रलाई खुसी गराउनका लागि कलशमा स्थापित हुन्छ। सयौँ किसिमका बलले युक्त, हजारौँ धाराबाट चुहुने सोम बलवान् अश्व युद्धमा गएझैँ कलशमा जान्छ।

स पूर्व्यो वसुविज्जायमानो मृजानो अप्सु दुदुहानो अद्रौ।
अभिशस्तिपा भुवनस्य राजा विदद् गातुं ब्रह्मणे पूयमानः ॥१०॥

ढुङ्गाले कुटेर निकालेको, जल मिसिएको, सबै भुवनको राजा, शोधित सोमरस आदि कालदेखि नै याजकबाट यज्ञमा ल्याइने गरेको छ। शत्रुबाट रक्षा प्रदान गर्ने, ऐश्वर्ययुक्त सोम यज्ञका लागि मार्ग प्रशस्त गर्दछ।

त्वया हि नः पितरः सोम पूर्वे कर्माणि चक्रुः पवमान धीराः।
वन्वन्नवातः परिधींरपोर्णु वीरेभिरश्वैर्मघवा भवा नः ॥११॥

हे शोधित सोमरस ! बुद्धिपूर्वक कार्य गर्ने हाम्रा पुर्खाले अनादि कालदेखि तिम्रो सहायता प्राप्त गर्नका लागि कार्य गरेका छन्। तिमी शत्रु नाश गर्दै अपराजित भएर, ती शत्रु पर हटाइदेऊ र हामीलाई वीर एवं घोडासहित धन प्रदान गर।

यथापवथा मनवे वयोधा अमित्रहा वरिवोविद्धविष्मान्।
एवा पवस्व द्रविणं दधान इन्द्रे सं तिष्ठ जनयायुधानि ॥१२॥

हे सोमदेव ! उहिलेदेखि तिमीले मनस्वी याजकका शत्रु नाश गर्ने र ऐश्वर्य एवं हविष्यान्न युक्त धन प्रदान गर्ने गरेका छौ। हामीलाई पनि धन प्रदान गर र इन्द्रदेवका लागि आयुध निर्माण गर।

पवस्व सोम मधुमाँ ऋतावापो वसानो अधि सानो अव्ये।
अव द्रोणानि घृतवान्ति सीद मदिन्तमो मत्सर इन्द्रपानः ॥१३॥

हे मधुर सोमरस ! तिमी जलमा मिसिएर, उच्च स्थानमा रहेर र चाल्नीले छानिएर पवित्र हुन्छौ। त्यसपछि इन्द्रदेवले पिउन योग्य तिम्रो यो हर्षप्रदायक सोम जलयुक्त पात्रमा पुगेर स्थित हुन्छ।

वृष्टिं दिवः शतधारः पवस्व सहस्रसा वाजयुर्देववीतौ।
सं सिन्धुभिः कलशे वावशानः समुस्रियाभिः प्रतिरन्न आयुः ॥१४॥

हे सोमदेव ! तिमी द्युलोकबाट सयौँ धारामा वर्षा गराऊ। हजारौँ किसिमका धन र अन्न दिने विचारले जलमा मिसिएर यज्ञस्थलका कलशमा स्थापित होऊ। गाईका दुधमा मिसिएर तिमी यज्ञमा प्रवेश गर र हामीलाई दीर्घायु बनाऊ।

एष स्य सोमो मतिभिः पुनानोऽत्यो न वाजी तरतीदरातीः।
पयो न दुग्धमदितेरिषिरमुर्विव गातुः सुयमो न वोळहा ॥१५॥

मनस्वी याजकबाट शोधित यो सोम फुर्तिलो घोडाजस्तै शत्रु मिचेर जान्छ। यो सोम गाईको दुधजस्तै पवित्र छ। लक्ष्यसम्म पुऱ्याउने घोडाझैँ यो सोम सुखदायी छ।

स्वायुधः सोतृभिः पूयमानोऽभ्यर्ष गुह्यं चारु नाम।
अभि वाजं सप्तिरिव श्रवस्याऽभि वायुमभि गा देव सोम ॥१६॥

याज्ञिकबाट शोधित, श्रेष्ठ यज्ञीय साधनले युक्त सोम सुन्दर रसमय स्वरूप प्राप्त गर्छ। अश्वजस्तै सर्वत्र गमनशील हे सोमदेव ! हामीलाई अन्न प्रदान गर, गाईको दुध प्रदान गर र प्राणवान् बनाऊ।

शिशुं जज्ञानं हर्यतं मृजन्ति शुम्भन्ति वह्निं मरुतो गणेन।
कविर्गीर्भिः काव्येना कविः सन्त्सोमः पवित्रमत्येति रेभन् ॥१७॥

नवजात शिशुजस्तै सबैलाई आनन्द गराउने सोमलाई मरुतहरूले शुद्ध गर्दछन्। सात गुणले युक्त मेधावर्द्धक सोम स्तुतिसँगै शब्द गर्दै शुद्ध हुन्छ।

ऋषिमना य ऋषिकृत्स्वर्षाः सहस्रणीथः पदवीः कवीनाम्।
तृतीयं धाम महिषः सिषासन्त्सोमो विराजमनु राजति ष्टुप् ॥१८॥

ऋषिजस्तै संस्कार भएको, ऋषित्व प्रदान गर्ने, स्तुत्य, ज्ञानदायी सोम स्वयं महान् छ। यसले तेस्रो धामरूपी स्वर्गलोकमा रहने तेजस्वी इन्द्रदेवलाई पनि तेजसम्पन्न बनाउँछ।

चमूषच्छ्येनः शकुनो विभृत्वा गोविन्दुर्द्रप्स आयुधानि बिभ्रत्।
अपामूर्मिं सचमानः समुद्रं तुरीयं धाम महिषो विवक्ति ॥१९॥

यो प्रशंसनीय, सबै खालका सामर्थ्यले युक्त, शक्तिमान्, समुद्रका छालजस्तै गतिमान् र गाईको दुधमा मिसाइने प्रवाहशील सोम चतुर्थ धामरूपी महलोकमा रहन्छ।

मर्यो न शुभ्रस्तन्वं मृजानोऽत्यो न सृत्वा सनये धनानाम्।
वृषेव यूथा परि कोशमर्षन्कनिक्रदच्चम्वोरा विवेश ॥२०॥

मानिसले सिँगारिएर शरीर सफासुग्घर बनाएझैं, द्रुतगामी अश्वजस्तै, धन प्राप्तिको इच्छा गरेझैं यो सोमरस डुक्रिँदै बथानतिर जाने साँढेजस्तै भएर कलशमा पस्छ।

पवस्वेन्दो पवमानो महोभिः कनिक्रदत्परि वाराण्यर्ष।
क्रीडञ्चम्वोरा विश पूयमान इन्द्रं ते रसो मदिरो ममत्तु ॥२१॥

महान् याजकबाट शोधित हे सोमदेव ! ध्वनि गर्दै कलशमा स्थापित होऊ। पवित्र भएर क्रीडा गर्दै यज्ञपात्रमा प्रवेश गर। तिम्रा आनन्ददायी रसले इन्द्रदेवलाई खुसी पारोस्।

प्रास्य धारा बृहतीरसृग्रन्नक्तो गोभिः कलशाँ आ विवेश।
साम कृण्वन्त्सामन्यो विपश्चित्क्रन्दन्नेत्यभि सख्युर्न जामिम् ॥२२॥

सोमरसको विशाल धारा विशेष तरिकाले प्रवाहित हुँदै गाईका दुधमा मिसिएर कलशमा पस्छ। सामगान गर्ने ज्ञानी याजक मित्रभावले प्रवाहित सोमको स्तुति गर्छन्।

अपघ्नन्नेषि पवमान शत्रून्प्रियां न जारो अभिगीत इन्दुः।
सीदन्वनेषु शकुनो न पत्वा सोमः पुनानः कलशेषु सत्ता ॥२३॥

पक्षी आफ्ना गुँडमा गएझैं र पुरुष पत्नीसित गएझैं पवित्र रूपमा शोधित, शत्रुको संहार गरेर जलसित मिसिएर परिष्कृत भएको सोमरस कलशमा स्थापित हुन्छ।

आ ते रुचः पवमानस्य सोम योषेव यन्ति सुदुघाः सुधाराः।
हरिरानीतः पुरुवारो अप्स्वचिक्रदत्कलशे देवयूनाम् ॥२४॥

हे पवमान सोमदेव ! तिम्रो किरण राम्री नारी र उत्तम दुधको धारोझैं निस्कन्छ। यो हरियो रङ्गको सोम बारम्बार जलमा र देवताका कलशमा शब्द गर्दै पसिरहन्छ।

[सूक्त - ९७]

ऋषि - वसिष्ठ मैत्रावरुणि। देवता - पवमान सोम। छन्द - त्रिष्टुप्।

अस्य प्रेषा हेमना पूयमानो देवो देवेभिः समपृक्त रसम्।
सुतः पवित्रं पर्येति रेभन्मितेव सद्म पशुमान्ति होता ॥१॥

गोठमा पशु गएझैं प्रेरक देवताजस्तो सोम पेलेर तयार गरिएपछि शोधक यन्त्ररूपी चाल्नीमा प्रवाहित हुन्छ। सुनले शोधित हुँदै यसले देवतालाई रसले सन्तुष्ट गर्दछ।

भद्रा वस्त्रा समन्या३ वसानो महान्कविर्निवचनानि शंसन्।
आ वच्यस्व चम्वोः पूयमानो विचक्षणो जागृविर्देववीतौ ॥२॥

वीरका लागि योग्य शौर्य र शोभासम्पन्न, महान् ज्ञानी, स्तुत्य, चैतन्य, विशिष्ट द्रष्टा हे सोमदेव ! तिमी पवित्र भएर यज्ञशालाका पात्रमा प्रवेश गर।

समु प्रियो मृज्यते सानो अव्ये यशस्तरो यशसां क्षैतो अस्मे।
अभि स्वर धन्वा पूयमानो यूयं पात स्वस्तिभिः सदा नः ॥३॥

यशस्वीहरूमा श्रेष्ठ, भूमिमा उत्पन्न, सन्तुष्टिदायक सोम चाल्नीले छानिएर शुद्ध हुन्छ। हे पवित्र सोमदेव ! तिमी शब्द गर्दै कल्याणकारी साधनले हामीलाई रक्षा गर।

प्र गायताभ्यर्चाम देवान्त्सोमं हिनोत महते धनाय।
स्वादुः पवाते अति वारमव्यमा सीदाति कलशं देवयुर्नः ॥४॥

मधुर र तेजस्वी सोमरस चाल्नीले छानेर पवित्रता धारण गर्दै पात्रमा स्थिर होस्। वैभव प्राप्तिका आशाले हामी स्तुत्य सोमरसलाई प्रेरित गर्दै देवताको अर्चना गरौं।

इन्दुर्देवानामुप सख्यमायन्त्सहस्रधारः पवते मदाय।
नृभिः स्तवानो अनु धाम पूर्वमगन्निन्द्रं महते सौभगाय ॥५॥

देवताका मित्रताको कामनाले यो सोम आनन्द प्रदान गर्न हजारौं धाराले प्रवाहित हुन्छ। याजकबाट स्तुत्य सोम सनातन स्वरूप पाएर इन्द्रका नजिकमा सौभाग्यशाली बन्दछ।

स्तोत्रे राये हरिरर्षा पुनान इन्द्रं मदो गच्छतु ते भराय।
देवैर्याहि सरथं राधो अच्छा यूयं पात स्वस्तिभिः सदा नः ॥६॥

हे हरियो आभासम्पन्न सोमदेव ! परिष्कृत भएर स्तोत्र स्वीकार गर्दै हामीलाई ऐश्वर्य प्रदान गर। युद्धमा तिम्रो आनन्दप्रदायक रस इन्द्रदेवलाई प्राप्त होस्। देवताहरूसँग एउटै रथमा आरूढ भएर उत्तम साधनले रक्षा गर्दै हामीलाई धन प्रदान गर।

प्र काव्यमुशनेव ब्रुवाणो देवो देवानां जनिमा विवक्ति।
महिव्रतः शुचिबन्धुः पावकः पदा वराहो अभ्येति रेभन् ॥७॥

उशना ऋषिझैं स्तोत्र पाठ गर्ने ऋत्विक्हरू देवताका जन्मको वृतान्त बयान गर्दछन्। महान् व्रती, तेजस्वी र पवित्र गराउने श्रेष्ठ सोमरस शब्द गर्दै पात्रमा प्रवाहित हुन्छ।

प्र हंसासस्तृपलं मन्युमच्छामादस्तं वृषगाणा अयासुः।
आङ्गूष्यं१ पवमानं सखायो दुर्मर्षं साकं प्र वदन्ति वाणम् ॥८॥

हाँसझैं विवेकी, बलवान् र डराएका वीर यिनै चाँडो काम गर्ने, रिसाहा र शत्रुनाशक सोम भएका ठाउँमा पुग्दछन्। सबैले पाउन सक्ने, अजेय, पवमान सोमले साथैमा रहने मित्रलाई प्रसन्न गर्नका लागि बाजा बजाउँछन्।

स रंहत उरुगायस्य जूतिं वृथा क्रीडन्तं मिमते न गावः।
परीणसं कृणुते तिग्मशृङ्गो दिवा हरिर्ददृशे नक्तमृज्रः ॥९॥

सहज रूपमा खेल्दै सोमले प्रशंसनीय गति प्राप्त गर्दछ। अर्काले मापन गर्न नसक्ने उसको तेजस्वी प्रकाश दिनमा हरियो र सौम्य आभायुक्त हुन्छ।

इन्दुर्वाजी पवते गोन्योघा इन्द्रे सोमः सह इन्वन्मदाय।
हन्ति रक्षो बाधते पर्यरातीर्वरिवः कृण्वन्वृजनस्य राजा ॥१०॥

इन्द्रदेवको शक्ति बढाउने, होतालाई धन दिने, शक्तिको स्वामी सोमलाई खुसी बनाउन भाँडामा छानिन्छ। सोमरसले राक्षस नष्ट गर्दछ र दुष्टलाई पनि पिटेर लखेट्छ।

अध धारया मध्वा पृचानस्तिरो रोम पवते अद्रिदुग्धः।
इन्दुरिन्द्रस्य सख्यं जुषाणो देवो देवस्य मत्सरो मदाय ॥११॥

ढुङ्गाका सहायताले निकालेको, तेजस्वी, सुखदायी सोम आफ्नो मधुर धाराले पवित्र हुन्छ। इन्द्रदेवको निकटता पाउने रहरमा त्यस सोमले उनको उत्साह बढाउँदै सबैलाई सन्तुष्टि दिइरहेको छ।

अभि प्रियाणि पवते पुनानो देवो देवान्त्स्वेन रसेन पृञ्चन्।
इन्दुर्धर्माण्यृतुथा वसानो दश क्षिपो अव्यत सानो अव्ये ॥१२॥

ऋतु धारण गर्ने, नियममा रहने, तेजस्वी सोम आफ्ना मधुर रसले देवतालाई सन्तुष्ट गराउँछ। औँलाले पवित्र हुँदै पात्रमा जम्मा भइरहेको छ।

वृषा शोणो अभिकनिक्रदद्गा नदयन्नेति पृथिवीमुत द्याम्।
इन्द्रस्येव वग्नुरा शृण्व आजौ प्रचेतयन्नर्षति वाचमेमाम् ॥१३॥

निरन्तर गतिशील, सुखवर्षक, हे दिव्य सोमरस ! तिमी द्युलोकबाट पृथिवीसम्म मेघजस्तै गर्जनले थर्काउँदै किरणका बीचमा व्याप्त छौ। हामी इन्द्रदेवको जस्तै तिम्रो निर्देशन सुन्दछौं। तिमी आफ्ना उपस्थितिको बोध गराउँदै हाम्रो स्तुति स्वीकार गर।

रसाय्यः पयसा पिन्वमान ईरयन्नेषि मधुमन्तमंशुम्।
पवमानः संतनिमेषि कृण्वन्निन्द्राय सोम परिषिच्यमानः ॥१४॥

आफैं स्वादिलो, गाईका दुधमा मिसिएर झन् स्वादिलो भएका हे सोमदेव ! पानीमा शोधित भएर तिमी धाराका रूपमा इन्द्रदेवलाई प्राप्त होऊ।

एवा पवस्व मदिरो मदायोदग्राभस्य नमयन्वधस्नैः।
परि वर्णं भरमाणो रुशन्तं गव्युर्नो अर्ष परि सोम सिक्तः ॥१५॥

हे उत्साहवर्द्धक सोमदेव ! आकाशका बादललाई जल बर्साउन प्रेरित गर्दै आनन्ददायी बन र पानीसँग सेतो वर्ण धारण गरेर गाईका दुधका रूपमा हाम्रा वरिपरि बगिराख।

जुष्ट्वी न इन्दो सुपथा सुगान्युरौ पवस्व वरिवांसि कृण्वन्।
घनेव विष्वग्दुरितानि विघ्नन्नधि ष्णुना धन्व सानो अव्ये ॥१६॥

हे सोमदेव ! स्तुतिले हर्षित भएर, उचित मार्गबाट सुगमतापूर्वक धन प्रदान गर्दै तिमी रसका रूपमा कलशमा प्रतिष्ठित होऊ र सबै राक्षसलाई आयुधले नष्ट गरेर अविनाशी चाल्नीमा माथिदेखि धाराका रूपमा प्रवाहित होऊ।

वृष्टिं नो अर्ष दिव्यां जिगत्नुमिडावतीं शंगयीं जीरदानुम्।
स्तुकेव वीता धन्वा विचिन्वन् बन्धूँरिमाँ अवराँ इन्दो वायून् ॥१७॥

हे सोमदेव ! हाम्रा लागि सुखदायक, जीवनप्रद, द्युलोकबाट आउने र पृथ्वीमा चल्ने वायुसित अन्नसहितको वर्षा गर। हामी सन्ततिजस्तै भएर त्यो वर्षा प्राप्त गरौं।

ग्रन्थिं न वि ष्य ग्रथितं पुनान ऋजुं च गातुं वृजिनं च सोम।
अत्यो न क्रदो हरिरा सृजानो मर्यो देव धन्व पस्त्यावान् ॥१८॥

हे सोमदेव ! गाँठो खोलेझैं हामीलाई पापबाट मुक्ति प्रदान गर र हाम्रो मार्ग सुगम बनाउँदै बलशाली बनाऊ। हे हरियो आभासम्पन्न दिव्य सोमदेव ! शोधित हुँदा अश्वझैं ध्वनि गर्दै, शत्रु संहार गरेर आफ्नो निवासस्थलरूपी कलशमा स्थापित होऊ।

जुष्टो मदाय देवतात इन्दो परि ष्णुना धन्व सानो अव्ये।
सहस्रधारः सुरभिरदब्धः परि स्रव वाजसातौ नृषह्ये ॥१९॥

हे सोमदेव ! अविनाशी चाल्नीमा धाराका रूपमा प्रवाहित भएर आनन्दवर्द्धक स्वरूप प्राप्त गर्दै शोधित होऊ। हिंसारहित हुँदै सुगन्धयुक्त हजारौं धारामा प्रवाहित होऊ र सङ्ग्राममा जाने वीरका लागि अन्न प्रदान गर्न सक्ने रस बर्साऊ।

अरश्मानो येऽरथा अयुक्ता अत्यासो न ससृजानास आजौ।
एते शुक्रासो धन्वन्ति सोमा देवासस्ताँ उप याता पिबध्यै ॥२०॥

बन्धनबाट मुक्त वा रथमा रहेको घोडा युद्धका लागि द्रुतगतिले लक्ष्यमा पुगेझैं परिष्कृत सोमरस कलशमा शीघ्रताका साथ गतिमान हुन्छ। देवताहरू त्यो आनन्ददायी सोमरस पान गर्नका लागि यज्ञस्थलमा जान्छन्।

एवा न इन्दो अभि देववीतिं परि स्रव नभो अर्णश्चमूषु।
सोमो अस्मभ्यं काम्यं बृहन्तं रयिं ददातु वीरवन्तमुग्रम् ॥२१॥

हे सोमदेव ! तिमी द्युलोकका जलले हाम्रो यज्ञका कलश भरिदेऊ र वीर सन्ततियुक्त धन प्रदान गर्ने सोमरस प्रदान गर।

तक्षद्यदी मनसो वेनतो वाग्ज्येष्ठस्य वा धर्मणि क्षोरनीके।
आदीमायन्वरमा वावशाना जुष्टं पतिं कलशे गाव इन्दुम् ॥२२॥

बोल्ने तेजस्वी पुरुषका अन्तःकरणबाट वाणी निस्कँदा मुखबाट शब्द उच्चरित हुन्छ। त्यस बेला ज्येष्ठ तेजस्वी सोम ल्याइन्छ र त्यसै बेला कलशमा रहेको, उत्तम, सेवनीय पालनकर्ता सोमको इच्छा गर्नेलाई गाई प्राप्त हुन्छन्।

प्र दानुदो दिव्यो दानुपिन्व ऋतमृताय पवते सुमेधाः।
धर्मा भुवद्वृजन्यस्य राजा प्र रश्मिभिर्दशभिर्भारि भूम ॥२३॥

दातालाई धन प्रदान गर्ने, द्युलोकमा उत्पन्न, उत्तम ज्ञानसम्पन्न, सोम इन्द्रदेवका निम्ति ज्ञानवर्द्धक रस प्रदान गर्दछ। उत्तम बल धारण गरेको राजाजस्तो सोमलाई दस रश्मिले विशेष विधिले धारण गर्छन्।

पवित्रेभिः पवमानो नृचक्षा राजा देवानामुत मर्त्यानाम्।
द्विता भुवद्रयिपती रयीणामृतं भरत्सुभृतं चार्विन्दुः ॥२४॥

दिव्य द्रष्टा, शोधित, पवित्र सोम नै देवता, मानिसको राजा र समग्र धनको स्वामी हो। उत्तम र सुन्दर सोम विशेष रीतिले जल धारण गर्दै देवता र मानिसमा विद्यमान रहन्छ।

अर्वाँ इव श्रवसे सातिमच्छेन्द्रस्य वायोरभि वीतिमर्ष।
स नः सहस्रा बृहतीरिषो दा भवा सोम द्रविणोवित्पुनानः ॥२५॥

हे सोमदेव ! इन्द्रदेव र वायुदेवले पान गर्नका लागि एवं हामीलाई धन तथा अन्न लाभ गराउनका

लागि अश्व युद्धमा गएझैं तिमी गतिशील होऊ। हे सोमदेव ! तिमी शोधित भएर हामीलाई सबै किसिमको ऐश्वर्य प्रदान गर।

**देवाव्यो नः परिषिच्यमानाः क्षयं सुवीरं धन्वन्तु सोमाः।**
**आयज्यवः सुमतिं विश्ववारा होतारो न दिवियजो मन्द्रतमाः ॥२६॥**

जलसित मिसिएर पात्रमा रहने, देवता सन्तुष्ट गर्ने सोमरसले उत्तम सन्ततियुक्त आवास प्रदान गरोस्। संयुक्त रूपले यज्ञ गर्ने, सबैका लागि स्वीकार्य हवन गर्ने, द्युलोकवासी देवताका निम्ति आहुति प्रदान गर्ने सोमरस अत्यन्त आनन्द प्रदान गर्छ।

**एवा देव देवताते पवस्व महे सोम प्सरसे देवपानः।**
**महश्चिद्धि ष्मसि हिताः समर्ये कृधि सुष्ठाने रोदसी पुनानः ॥२७॥**

हे सोमदेव ! यस दैवी यज्ञमा देवताले पान गर्नका लागि योग्य सोमरस प्रदान गर। सोमरसका प्रेरणाले देवताले सङ्ग्राममा बलिया शत्रु पराजित गर्न सकून्। हे सोमदेव ! तिमी परिष्कृत भएर भूलोक र पृथ्वीलाई सजिलोसित रहने योग्य बनाऊ।

**अश्वो न क्रदो वृषभिर्युजानः सिंहो न भीमो मनसो जवीयान्।**
**अर्वाचीनैः पथिभिर्ये रजिष्ठा आ पवस्व सौमनसं न इन्दो ॥२८॥**

याजकहरूले एकत्र गरेको सोमरस सिंहजस्तै भयङ्कर, मनजस्तै द्रुतगामी र अश्वजस्तै ध्वनि गर्दछ। हे सोमदेव ! सुगम र सजिलो मार्गबाट सद्भावपूर्वक रस प्रदान गर।

**शतं धारा देवजाता असृग्रन्त्सहस्रमेनाः कवयो मृजन्ति।**
**इन्दो सनित्रं दिव आ पवस्व पुरएतासि महतो धनस्य ॥२९॥**

हे सोमदेव ! देवताका लागि उत्पन्न सयौं धारा प्रवाहित छन्। तिनलाई हजारौं ज्ञानीले पवित्र गर्छन्। हे सोमदेव ! महान् ऐश्वर्यका दाता बनेर द्युलोकको धन प्रदान गर।

**दिवो न सर्गा असमृग्रमह्नां राजा न मित्रं प्र मिनाति धीरः।**
**पितुर्न पुत्रः क्रतुभिर्यतान आ पवस्व विशे अस्या अजीतिम् ॥३०॥**

दिउँसो सूर्यको किरण प्रसारित भएझैं सोमरसका धारा प्रवाहित हुन्छन्। राजा सोम बुद्धिमान् मित्रझैं कसैलाई दुःखदायी हुँदैन। आफ्ना कार्यकौशलले उन्नति गर्ने पुत्रजस्तै सम्पूर्ण प्रजालाई उन्नतिशील बनाउने सोमरस हामीलाई प्राप्त होस्।

**प्र ते धारा मधुमतीरसृग्रन्वारान्यत्पूतो अत्येष्यव्यान्।**
**पवमान पवसे धाम गोनां जज्ञानः सूर्यमपिन्वो अर्कैः ॥३१॥**

हे सोमदेव ! अविनाशी चाल्नीबाट छिरेपछि तिम्रो मधुर धारा प्रकट हुन्छ। गाईको धाममा प्रकट र शुद्ध भएर तिमी सूर्यलाई तेजले पूर्ण गराउँछौ।

**कनिक्रदनु पन्थामृतस्य शुक्रो वि भास्यमृतस्य धाम।**
**स इन्द्राय पवसे मत्सरवान्हिन्वानो वाचं मतिभिः कवीनाम् ॥३२॥**

अमृतजस्तो सोम यज्ञका मार्गमा जाँदा ध्वनि गर्दै यज्ञस्थललाई तेजस्वी र प्रकाशित गराउँछ। स्तुति स्वीकार गरेको घोषणा गर्ने आनन्दवर्द्धक सोम इन्द्रदेवले प्राप्त गर्छन्।

**दिव्यः सुपर्णोऽव चक्षि सोम पिन्वन्धाराः कर्मणा देववीतौ।**
**एन्दो विश कलशं सोमधानं क्रन्दन्निहि सूर्यस्योप रश्मिम् ॥३३॥**

हे सोमदेव ! तिमी द्युलोकमा उत्पन्न हुने श्रेष्ठ पातयुक्त छौ। यज्ञीय कर्मसँग यस दैवी यज्ञका चारैतिर हेर्दै, सूर्यको किरण आफूमा समेटेको घोषणा गर्दै सोमकलशभित्र रसधाराका रूपमा प्रवेश गर।

**तिस्रो वाच ईरयति प्र वह्निर्ऋतस्य धीतिं ब्रह्मणो मनीषाम्।**
**गावो यन्ति गोपतिं पृच्छमानाः सोमं यन्ति मतयो वावशानाः ॥३४॥**

याजकहरू सत्य धारण गर्ने तीन वेदका मन्त्रले दिव्य, श्रेष्ठ सोमको स्तुति गर्दछन्। साँढेका नजिकै जाने गाईझैं उत्तम सुखको खोजी गर्ने स्तोता सोमका नजिकै पुग्छन्।

**सोमं गावो धेनवो वावशानाः सोमं विप्रा मतिभिः पृच्छमानाः।**
**सोमः सुतः पूयते अज्यमानः सोमे अर्कास्त्रिष्टुभः सं नवन्ते ॥३५॥**

धाराका रूपमा निकालेपछि शोधित भएको सोम पात्रमा खस्दछ। ज्ञानीहरूको बुद्धि त्रिष्टुप् छन्दका मन्त्रले त्यसको स्तुति गर्दछ। दुधालु गाई सोमको इच्छा गर्दछ।

एवा नः सोम परिषिच्यमान आ पवस्व पूयमानः स्वस्ति।
इन्द्रमा विश बृहता रवेण वर्धया वाचं जनया पुरंधिम् ॥३६॥

हे सोमदेव ! जलमिश्रित र शुद्ध हुँदै तिमी हाम्रो कल्याणका लागि ध्वनि गर्दै शोधित होऊ र आनन्दपूर्वक इन्द्रदेवलाई सन्तुष्ट गराऊ। हाम्रो प्रार्थना स्वीकार गर्दै हामीलाई सद्‌बुद्धि प्रदान गर।

आ जागृविर्विप्र ऋता मतीनां सोमः पुनानो असदच्चमूषु।
सपन्ति यं मिथुनासो निकामा अध्वर्यवो रथिरासः सुहस्ताः ॥३७॥

चैतन्य, सत्य स्तुतिका ज्ञाता सोमदेव शुद्ध भएर पात्रमा उत्रन्छन्। उत्तम कर्ममा कुशल, शरीरधारी मनोकाङ्क्षा लिएको अध्वर्युले यसलाई एकत्र गरेर सुरक्षित राख्दछन्।

स पुनान उप सूरे न धातोभे अप्रा रोदसी वि ष आवः।
प्रिया चिद्यस्य प्रियसास ऊती स तू धनं कारिणे न प्र यंसत् ॥३८॥

पवित्र सोम इन्द्रदेवलाई प्राप्त हुन्छ। सोमले आकाश र पृथ्वीमा आफ्नो तेज पूर्ण गराउँछ। यसका अत्यन्त प्रिय रसयुक्त धाराले हामीलाई संरक्षण र ऐश्वर्य प्रदान गर्दछ।

स वर्धिता वर्धनः पूयमानः सोमो मीढ्वाँ अभि नो ज्योतिषावीत्।
येना नः पूर्वे पितरः पदज्ञाः स्वर्विदो अभि गा अद्रिमुष्णन् ॥३९॥

स्वयं बढ्दो अवस्थामा रहने, देवत्व वृद्धि गराउने, खोजेको कुरो पूरा गरिदिने, शोधित सोमका तेजले हाम्रो रक्षा गरोस्। मन्त्रको ज्ञान भएका, आत्मज्ञानी, विभिन्न चरण वा पद जानेका सर्वज्ञ हाम्रा पुर्खाले पर्वतमा गाई र मेघमा किरण फेला पारे।

अक्रान्त्समुद्रः प्रथमे विधर्मञ्जनयन्प्रजा भुवनस्य राजा।
वृषा पवित्रे अधि सानो अव्ये बृहत्सोमो वावृधे सुवान इन्दुः ॥४०॥

जलयुक्त, समस्त भुवनको राजा, बलवर्द्धक, पेलेर निकालेको सोम सर्वप्रथम प्रजाको उत्साह बढाएर उनीहरूको उन्नति गर्दै सबैभन्दा महान् बन्यो।

महत्तत्सोमो महिषश्चकारापां यद्गर्भोऽवृणीत देवान्।
अदधादिन्द्रे पवमान ओजोऽजनयत्सूर्ये ज्योतिरिन्दुः ॥४१॥

महान् शक्तिशाली दिव्य सोमबाट महान् कार्य सम्पन्न हुन्छ। गर्भमा जल धारण गरेर देवतालाई पोषण प्रदान गर्ने उही हो। शुद्ध भएर उसैले इन्द्रदेवलाई सामर्थ्य प्रदान गर्दछ र उसैले सूर्यमा तेज स्थापित गर्दछ।

मत्सि वायुमिष्टये राधसे च मत्सि मित्रावरुणा पूयमानः।
मत्सि शर्धो मारुतं मत्सि देवान्मत्सि द्यावापृथिवी देव सोम ॥४२॥

हे दिव्य सोमदेव ! हामीलाई अन्न र धन प्राप्त गराउन वायुलाई खुसी गर। शोधित भएर मरुत्का सामर्थ्यले आकाश र पृथ्वीमा मित्र र वरुणको खुसी बढाइदेऊ।

ऋजुः पवस्व वृजिनस्य हन्तापामीवां बाधमानो मृधश्च।
अभिश्रीणन्पयः पयसाभि गोनामिन्द्रस्य त्वं तव वयं सखायः ॥४३॥

हे सोमदेव ! तिमी दुष्टनाशक, रोगनिवारक र शत्रुनाशक रस सुगमतापूर्वक प्रदान गर। हे सोमदेव ! तिमी इन्द्रदेवका मित्र हौ र हामी तिम्रा मित्र हौं। त्यसैले गाईका दुधमा मिसिएको सोमरस हामीलाई पनि प्रदान गर।

मध्वः सूदं पवस्व वस्व उत्सं वीरं च न आ पवस्वा भगं च।
स्वदस्वेन्द्राय पवमान इन्दो रयिं च न आ पवस्वा समुद्रात् ॥४४॥

हे सोमदेव ! मधुरतायुक्त अन्न र धन प्रदान गर्ने रस हामीलाई प्रदान गर। सन्तानरूपी धन प्रदान गर। हे शोधित सोमदेव ! इन्द्रदेवलाई रस प्रदान गर्दै हामीलाई अन्तरिक्षबाट धन प्रदान गर्ने रस देऊ।

सोमः सुतो धारयात्यो न हित्वा सिन्धुर्न निम्नमभि वाज्यक्षाः।
आ योनिं वन्यमसदत्पुनानः समिन्दुर्गोभिरसरत्समद्भिः ॥४५॥

निकालेको सोमरस अश्वझैं तीव्र गतिले धाराका रूपमा प्रवाहित हुन्छ। त्यो बलशाली सोम तल राखेका कलशमा नदीझैं गइरहेको हुन्छ। शोधित सोम वनरूपी योनिमा रहन्छ। त्यो सोम गाईको दुधमा मिसिएर जलसँगै शोधन हुन्छ।

एष स्य ते पवत इन्द्र सोमश्चमूषु धीर उशते तवस्वान्।
स्वर्चक्षा रथिरः सत्यशुष्मः कामो न यो देवयतामसर्जि ॥४६॥

हे इन्द्रदेव ! सर्वद्रष्टा, उत्तम रथी, श्रेष्ठ बलयुक्त, धैर्यवान् र द्रुतगामी सोमरस याजकभैँ इच्छा पूर्तिको कामना गर्दै कलशमा प्रतिष्ठित हुन्छ।

एष प्रत्नेन वयसा पुनानस्तिरो वर्षांसि दुहितुर्दधानः।
वसानः शर्म त्रिवरूथमप्सु होतेव याति समनेषु रेभन् ॥४७॥

यो सोमरस अनादि कालदेखि हविष्यान्नसँगै शोधित हुँदै छ। पृथ्वीको दूरी मेट्दै जाडो, गर्मी र वर्षा तीनै याममा समान रूपले प्राप्त हुने सोमरस ध्वनि गर्दै यज्ञमा राखिन्छ।

नू नस्त्वं रथिरो देव सोम परि स्रव चम्वोः पूयमानः।
अप्सु स्वादिष्ठो मधुमाँ ऋतावा देवो न यः सविता सत्यमन्मा ॥४८॥

हे सोमदेव ! स्वादयुक्त, मधुर, ज्ञानवान् र सर्वप्रेरक बनेर रथमा आरूढ हुँदै जल मिश्रित रसका रूपमा शोधित यज्ञपात्रमा स्थापित होऊ। देवताहरूभैँ सत्य र मननीय स्तुति सुन्दै आफ्नो रस प्रदान गर।

अभि वायुं वीत्यर्षा गृणानो३ऽभि मित्रावरुणा पूयमानः।
अभी नरं धीजवनं रथेष्ठामभीन्द्रं वृषणं वज्रबाहुम् ॥४९॥

हे सोम ! स्तुति गरिसकेपछि वायुदेवले पान गर्नका लागि तिमी प्रस्तुत होऊ। पवित्र भएर मित्रवरुणलाई प्राप्त होऊ। नेतृत्ववान्, बुद्धिप्रदाता, रथमा आरूढ अश्विनीकुमार भएतिर पुग र वज्रजस्तै भुजा भएका इन्द्रका नजिक जाऊ।

अभि वस्त्रा सुवसनान्यर्षाभि धेनूः सुदुघाः पूयमानः।
अभि चन्द्रा भर्तवे नो हिरण्याभ्यश्वान्रथिनो देव सोम ॥५०॥

हे दिव्य सोमदेव ! हामीलाई उत्तम वस्त्र, तेजस्वी स्वर्ण आदि ऐश्वर्य प्रदान गर। हाम्रो रथ चलाउने अश्व देऊ। तिमी शुद्ध भएर हामीलाई भर्खर ब्याएका गाई देऊ।

अभी नो अर्ष दिव्या वसून्यभि विश्वा पार्थिवा पूयमानः।
अभि येन द्रविणमश्नवामाभ्यार्षेयं जमदग्निवन्नः ॥५१॥

हे सोमदेव ! शुद्ध भएर हामीलाई दिव्य धन र पार्थिव ऐश्वर्य प्रदान गर। जमदग्नि आदि ऋषिको जस्तै सम्पत्ति प्रदान गर। हामीलाई धन सदुपयोग गर्ने सामर्थ्य प्राप्त होस्।

अया पवा पवस्वैना वसूनि माँश्चत्व इन्दो सरसि प्र धन्व।
ब्रध्नश्चिदत्र वातो न जूतः पुरुमेधश्चित्तकवे नरं दात् ॥५२॥

हे सोमदेव ! पवित्र धाराले हामीलाई ऐश्वर्य प्रदान गर। प्रकृतिको मूल आधार सूर्यदेवले वायुदेवलाई प्रवाहित गरेभैँ तिमी वसतीवरी नामका कलशमा प्रवाहित भएर बुद्धिशाली इन्द्रदेवलाई प्राप्त होऊ र हामीलाई सुसन्तान प्रदान गर।

उत न एना पवया पवस्वाधि श्रुते श्रवाय्यस्य तीर्थे।
षष्टिं सहस्रा नैगुतो वसूनि वृक्षं न पक्वं धूनवद्रणाय ॥५३॥

हे सोमदेव ! स्तुति गर्न योग्य थलोका रूपमा रहेको हाम्रा यज्ञस्थलमा पवित्र धाराले शुद्ध होऊ। हे शत्रुनाशक सोमदेव ! युद्धमा विजय प्राप्तिका लागि वृक्षबाट पाइने पाकेको फलभैँ साठीहजार धन हामीलाई प्रदान गर।

महीमे अस्य वृषनाम शूषे माँश्चत्वे वा पृशने वा वधत्रे।
अस्वापयन्निगुतः स्नेहयच्चापामित्राँ अपाचितो अचेतः ॥५४॥

साधकलाई सुखको वर्षा गराउनु र दुराचारीलाई पराजित गरेर भुकाउनु यी तिम्रा दुई वटा सुखदायी कार्य हुन्। हे सोमदेव ! तिमी सङ्ग्रामद्वारा, मल्लयुद्धद्वारा वा लुकेर हानी गर्न खोज्ने शत्रुलाई शक्तिहीन बनाएर नष्ट गर र मूर्खता हटाइदेऊ।

सं त्री पवित्रा विततान्येष्यन्वेकं धावसि पूयमानः।
असि भगो असि दात्रस्य दातासि मघवा मघवद्भ्य इन्दो ॥५५॥

हे सोमदेव ! अग्नि, वायु र जलरूपी तीन वटा चाल्नीबाट शोधित भएर तिमी कलशरूपी एउटा भूमण्डलतिर दौडँदै आउँछौ। तिमी ऐश्वर्यवान् छौ, दानका लागि योग्य धन प्रदान गर्ने र धनीहरूका पनि तिमी अधिपति हौ।

एष विश्वविन्पवते मनीषी सोमो विश्वस्य भुवनस्य राजा।
द्रप्साँ ईरयन्विदथेष्विन्दुर्वि वारमव्यं समयाति याति ॥५६॥

सर्वज्ञ, ज्ञानी र भुवनका राजा सोमदेव अनश्वर चाल्नीमा दुई किसिमले प्रवाहित हुँदै सबै यज्ञमा रस प्रदान गर्दछन्।

इन्दुं रिहन्ति महिषा अदब्धाः परे रेभन्ति कवयो न गृध्राः।
हिन्वन्ति धीरा दशभिः क्षिपाभिः समञ्जते रूपमपां रसेन ॥५७॥

महान् ऋषिले अविनाशी सोमरसको स्वाद लिन्छन्। धनको कामना भएका ज्ञानीभैँ विद्वान याजकहरू दसै औँलाले यो सोमरस जलमा मिसाउँदै स्तुति गर्दछन्।

त्वया वयं पवमानेन सोम भरे कृतं वि चिनुयाम शश्वत्।
तन्नो मित्रो वरुणो मामहन्तामदितिः सिन्धुः पृथिवी उत द्यौः ॥५८॥

हे संसार शुद्ध र पवित्र गराउने सोमदेव ! तिम्रा सहायताले हामी जीवन सङ्ग्राममा निरन्तर उत्तम कर्म चयन गरौँ। यसका लागि अदिति, मित्र, वरुण, पृथ्वी, सिन्धु र द्युलोकले हामीलाई यशस्वी बनाऊन्।

## [सूक्त - ९८]

**ऋषि** – अम्बरीष ऋजिश्वा भारद्वाज। **देवता** – पवमान सोम। **छन्द** – अनुष्टुप् बृहती।

अभि नो वाजसातमं रयिमर्ष पुरुस्पृहम्।
इन्दो सहस्रभर्णसं तुविद्युम्नं विभ्वासहम् ॥१॥

सयौँ मानिसबाट प्रशंसित, हजारौँको पोषक, विशेष ओजस्वी, बलवर्द्धक सोमरसले हामीलाई धन प्रदान गरोस्।

परि ष्य सुवानो अव्ययं रथे न वर्माव्यत।
इन्दुरभि द्रुणा हितो हियानो धाराभिरक्षाः ॥२॥

कवचयुक्त पुरुष रथमा आरूढ भएभैँ स्तुत्य सोम कलशबाट खन्याउँदा धाराका रूपमा प्रवाहित हुन्छ।

परि ष्य सुवानो अक्षा इन्दुरव्ये मदच्युतः।
धारा य ऊर्ध्वो अध्वरे भ्राजा नैति गव्ययुः ॥३॥

सूर्यरश्मिको कामना गर्ने, स्वाभाविक तेजयुक्त यो श्रेष्ठ सोम धाराका रूपमा यज्ञमा प्रयोग हुन्छ। याजकलाई आनन्दित गर्नका लागि प्राकृतिक ढङ्गले परिष्कृत हुन्छ।

स हि त्वं देव शश्वते वसु मर्ताय दाशुषे।
इन्दो सहस्रिणं रयिं शतात्मानं विवाससि ॥४॥

हे सोमदेव ! तिमी सधैँ दान दिने मानिसलाई सयौँ किसिमका धन प्रदान गर्दछौ।

वयं ते अस्य वृत्रहन्वसो वस्वः पुरुस्पृहः।
नि नेदिष्ठतमा इषः स्याम सुम्नस्याध्रिगो ॥५॥

हे उत्तम आश्रय प्रदान गर्ने सोमदेव ! सबैबाट प्रशंसनीय, सबैलाई पोषण प्रदान गर्ने तिम्रा विभूतिका निकटताको लाभ हामी चाहन्छौँ। सूर्यका रश्मिसित रहने हे सोमदेव ! तिमीले प्रदान गरेका अन्न आदिको उपयोगबाट हामी सुखी होऔँ।

द्विर्यं पञ्च स्वयशसं स्वसारो अद्रिसंहतम्।
प्रियमिन्द्रस्य काम्यं प्रस्नापयन्त्यूर्मिणम् ॥६॥

ढुङ्गाले पेलेर निकालेको, कीर्तिवान्, सबैको इष्ट र इन्द्रदेवका लागि प्रिय सोमलाई दस औँलाले राम्ररी शोधित गर्दछन् र जलसित मिसाउँछन्।

परि त्यं हर्यतं हरिं बभ्रुं पुनन्ति वारेण।
यो देवान्विश्वाँ इत्परि मदेन सह गच्छति ॥७॥

हरियो र खैरो रङ्गका सुन्दर सोमलाई जलले पवित्र बनाउँछ। यो सोम इन्द्र आदि देवताका नजिक आफ्नो हर्षप्रदायक गुणसँगै जान्छ।

अस्य वो ह्यवसा पान्तोदक्षसाधनम्। यः सूरिषु श्रवो बृहद्दधे स्वर्ण हर्यतः ॥

हे देवता हो ! रक्षण सामर्थ्यले युक्त र बलवर्द्धक सोमरस पान गर। यस सोमरसले ज्ञानीलाई सूर्यले भैँ तेजस्विता प्रदान गर्दछ।

स वां यज्ञेषु मानवी इन्दुर्जनिष्ट रोदसी।
देवो देवी गिरिष्ठा अस्रेधन्तं तुविष्वणि ॥९॥

हे द्युलोक र पृथिवी ! यज्ञमा मानिसको हितकारी र तेजस्वी सोमरस उत्पन्न गर। पर्वतका माथिल्लो चुचुरामा रहेका तेजस्वी सोमरसलाई यज्ञमा याजकले तयार गर्छन्।

इन्द्राय सोम पातवे वृत्रघ्ने परि षिच्यसे।
नरे च दक्षिणावते देवाय सदनासदे ॥१०॥

हे सोमदेव ! दुष्टसंहारक इन्द्रदेवले पान गर्नका लागि, यज्ञमा दक्षिणा दिने वीरका लागि र यज्ञ गर्ने यजमानका लागि तिमी पात्रमा प्रवाहित भएर स्थिर होऊ।

ते प्रत्नासो व्युष्टिषु सोमाः पवित्रे अक्षरन्।
अपप्रोथन्तः सनुतर्हुरश्चितः प्रातस्ताँ अप्रचेतसः ॥११॥

बिहानीपख लुकेर बसेको अल्छ्याइँरूपी अज्ञानी चोरलाई सोमले भगाउँछ। त्यस सनातन सोमलाई बिहानै शोधित गरेर पवित्र बनाउँछन्।

तं सखायः पुरोरुचं यूयं वयं च सूरयः।
अश्याम वाजगन्ध्यं सनेम वाजपस्त्यम् ॥१२॥

हे मित्र हो ! तिमीहामी त्यही पराक्रमी, पौष्टिक, श्रेष्ठ सुगन्धी, शक्तिसामर्थ्य बढाउने सोमरस प्राप्त गरौँ।

[सूक्त - ९९]

ऋषि - रेभसूनू काश्यप। देवता - पवमान सोम। छन्द - अनुष्टुप् बृहती।

आ हर्यताय धृष्णवे धनुस्तन्वन्ति पौंस्यम्।
शुक्रां वयन्त्यसुराय निर्णिजं विपामग्रे महीयुवः ॥१॥

योद्धाले धनुषमा प्रत्यञ्चा चढाएझैं महान् उद्देश्य भएका ऋत्विक्ले विद्वान्का सामु प्राणशक्ति वृद्धि गर्नका लागि वाणीले तेजस्वी सोम विस्तार गर्दछन्।

अध क्षपा परिष्कृतो वाजाँ अभि प्र गाहते।
यदी विवस्वतो धियो हरिं हिन्वन्ति यातवे ॥२॥

रात सकिएपछि उषा कालमा जल मिसिएको परिष्कृत सोमले पौष्टिकता प्रदान गर्दछ। साधकका औँलाले हरियो आभा भएको सोम कलशमा खन्याउँछन्।

तमस्य मर्जयामसि मदो य इन्द्रपातमः।
यं गाव आसभिर्दधुः पुरा नूनं च सूरयः ॥३॥

परिष्कृत सोम आनन्ददायक हुनाले इन्द्रदेवले पिउन योग्य छ। गाई र साधकले त्यसको पूर्ण सेचन गर्दछन् र आज पनि गर्दै छन्। यस्तो सोम हामी परिष्कृत गर्दछौँ।

तं गाथया पुराण्या पुनानमभ्यनूषत।
उतो कृपन्त धीतयो देवानां नाम बिभ्रतीः ॥४॥

पवित्र सोमरलाई प्रचलित स्तवनले याजकहरू स्तुति गर्दछन्। यस कामका लागि प्रेरित औँलाले देवताको हविका लागि सोम तयार गर्दछन्।

तमुक्षमाणमव्यये वारे पुनन्ति धर्णसिम्।
दूतं न पूर्वचित्तय आ शासते मनीषिणः ॥५॥

सबैलाई धारण गर्ने, दुधले सेचन गरिएको सोमरसको भुस चाल्नीले छानेर सफा बनाइन्छ। पूर्ण ज्ञान प्राप्त गर्ने कामनाले दूतजस्तो बनेका सोमलाई ज्ञानीहरूले स्तुति गर्दछन्।

स पुनानो मदिन्तमः सोमश्चमूषु सीदति।
पशौ न रेत आदधत्पतिर्वचस्यते धियः ॥६॥

भारी बोक्ने पशुलाई भारी बोकाइएझैं आनन्ददायक पवित्र सोमरस पात्रमा हालिन्छ। पात्रमा हालेको बुद्धिको अधिष्ठाता त्यो सोम स्तुत्य हुन्छ।

स मृज्यते सुकर्मभिर्देवो देवेभ्यः सुतः।
विदे यदासु संददिर्महीरपो वि गाहते ॥७॥

उत्तम कर्म गर्ने याजकले देवताका लागि निकालेको सोमरस जलमा मिसिएर शोधित हुन्छ। मानिसका समूहमा दाताका रूपमा सोम चिनिएको छ।

**सुत इन्दो पवित्र आ नृभिर्यतो वि नीयसे।**
**इन्द्राय मत्सरिन्तमश्चमूष्वा नि षीदसि ॥८॥**

हे सोमदेव ! तिमीबाट निकालेको अत्यन्त विशाल र अति आनन्दायक रस इन्द्रलाई पिउनका लागि चाल्नीले शोधित गरेर याजकले कलशमा राखेका छन्।

[सूक्त - १००]

**ऋषि** - रेभसूनू काश्यप। **देवता** - पवमान सोम। **छन्द** - अनुष्टुप्।

**अभी नवन्ते अद्रुहः प्रियमिन्द्रस्य काम्यम्।**
**वत्सं न पूर्व आयुनि जातं रिहन्ति मातरः ॥१॥**

द्रोहविनाको र इन्द्रदेवलाई प्रिय लाग्ने सोम जलले रुचिपूर्वक प्राप्त गरेर माउले बाछो सह्यारेझैं सह्यार्दछ।

**पुनान इन्दवा भर सोम द्विबर्हसं रयिम्।**
**त्वं वसूनि पुष्यसि विश्वानि दाशुषो गृहे ॥२॥**

हे कान्तिमान् सोमदेव ! दुवै लोकमा हुने खालको पवित्र धन हामीलाई देऊ। तिमी दाताको घरलाई विभिन्न किसिमका ऐश्वर्यहरूले पूर्ण गराउँछौ।

**त्वं धियं मनोयुजं सृजा वृष्टिं न तन्यतुः।**
**त्वं वसूनि पार्थिवा दिव्या च सोम पुष्यसि ॥३॥**

बादलले वर्षा गराएझैं मनलाई उच्च बनाउने बुद्धि हामीलाई प्रदान गर। तिमी द्युलोक र पृथिवीको ऐश्वर्य बढाउँछौ।

**परि ते जिग्युषो यथा धारा सुतस्य धावति।**
**रंहमाणा व्य१व्ययं वारं वाजीव सानसिः ॥४॥**

हे सोमदेव ! सेवन गर्नका लागि तिमीबाट निकालेको रस अविनाशी चाल्नीबाट द्रुतगामी धाराका रूपमा वीर अश्वका गतिले बाहिर प्रवाहित हुन्छ।

**क्रत्वे दक्षाय नः कवे पवस्व सोम धारया।**
**इन्द्राय पातवे सुतो मित्राय वरुणाय च ॥५॥**

हे ज्ञानी सोमदेव ! इन्द्र, वरुण र मित्रदेवले पान गर्नका लागि निकालेको तिम्रो रस हामीलाई ज्ञानवान् र बलशाली बनाउन धाराका रूपमा प्रवाहित हुँदै पवित्र बनोस्।

**पवस्व वाजसातमः पवित्रे धारया सुतः।**
**इन्द्राय सोमा विष्णवे देवेभ्यो मधुमत्तमः ॥६॥**

रसका रूपमा निस्केका हे सोमदेव ! आफ्ना मधुर पोषक धाराले इन्द्र, विष्णु आदि सबै देवता सन्तुष्ट गराउनका लागि पवित्र भएर असल पात्रमा स्थिर होऊ।

**त्वां रिहन्ति मातरो हरिं पवित्रे अद्रुहः।**
**वत्सं जातं न धेनवः पवमान विधर्मणि ॥७॥**

छानेर सफा हुने, हे हरियो आभासम्पन्न सोमरस ! गाईले भर्खर जन्माएको बाछो चाटेझैं आपसमा द्रोह नगर्ने औंलाले तिमीलाई सफा गर्दछन्।

**पवमान महि श्रवश्चित्रेभिर्यासि रश्मिभिः।**
**शर्धन्तमांसि जिघ्नसे विश्वानि दाशुषो गृहे ॥८॥**

हे पवित्र सोमदेव ! आफ्ना सुन्दर रश्मिसँग सर्वत्र जाँदै महान् यशस्वी हुन्छौ र तिमी दाताका घरमा गएर आफ्नो शौर्य देखाउँदै सम्पूर्ण अन्धकार समाप्त गर्दछौ।

**त्वं द्यां च महिव्रत पृथिवीं चाति जभ्रिषे।**
**प्रति द्रापिममुञ्चथाः पवमान महित्वना ॥९॥**

पवित्रता प्राप्त गर्ने हे महान् व्रतधारी सोमदेव ! अन्तरिक्ष र पृथिवीलाई राम्ररी धारण गर्दै तिमी आफ्ना महिमाअनुसारको कवच धारण गर्दछौ।

[सूक्त - १०१]

ऋषि - श्यावाश्वि मनु सांवरण। देवता - पवमान सोम। छन्द - अनुष्टुप् गायत्री।

**पुरोजिती वो अन्धसः सुताय मादयित्नवे।**
**अप श्वानं श्नथिष्टन सखायो दीर्घजिह्व्यम् ॥१॥**

हे मित्र हो ! अगाडि राखेको आनन्द प्रदान गर्ने सोमतिर लामो जिब्रो निकाल्दै जान लागेको कुकुर धपाओ।

**यो धारया पावकया परिप्रस्यन्दते सुतः। इन्दुरश्वो न कृत्व्यः ॥२॥**

यज्ञको सहयोगी सोम शोधित भएका बेला अश्वका गतिले पात्रमा खस्दछ।

**तं दुरोषमभी नरः सोमं विश्वाच्या धिया। यज्ञं हिन्वन्त्यद्रिभिः ॥३॥**

हे ऋत्विक् हो ! दुष्टतानाशक सोमरसलाई आह्वान गर र यज्ञका निम्ति पूरा बलबुद्धि लगाएर ढुङ्गाले कुटेर रस निकाल।

**सुतासो मधुमत्तमाः सोमा इन्द्राय मन्दिनः।**
**पवित्रवन्तो अक्षरन्देवान्गच्छन्तु वो मदाः ॥४॥**

मधुर हर्षप्रदायक सोमरस पवित्र भएर इन्द्रदेवका लागि तयार छ। हे सोमदेव ! तिम्रो आनन्ददायक रस देवतासित पुगोस्।

**इन्दुरिन्द्राय पवत इति देवासो अब्रुवन्।**
**वाचस्पतिर्मखस्यते विश्वस्येशान ओजसा ॥५॥**

स्तोताहरू सोमरस इन्द्रदेवका लागि शोधित गर्छौं भन्दछन्। ज्ञानरक्षक, समर्थ सोम यज्ञमा काम लाग्दछ।

**सहस्रधारः पवते समुद्रो वाचमीङ्खयः।**
**सोमः पती रयीणां सखेन्द्रस्य दिवेदिवे ॥६॥**

वाणीका प्रेरक, ऐश्वर्यवान्, इन्द्रदेवको मित्ररूपी सोम प्रत्येक दिन सहस्र धाराले कलशमा शोधित हुन्छ।

**अयं पूषा रयिर्भगः सोमः पुनानो अर्षति।**
**पतिर्विश्वस्य भूमनो व्यख्यद्रोदसी उभे ॥७॥**

परिपोषक, सेवनीय, सुन्दर यो दिव्य सोम छानिँदै तलका भाँडामा प्रवाहित हुन्छ। सबै प्राणीको पालक यो सोमरस आफ्ना दिव्य तेजले दुवै लोक प्रकाशित गर्दछ।

**समु प्रिया अनूषत गावो मदाय घृष्वयः।**
**सोमासः कृण्वते पथः पवमानास इन्दवः ॥८॥**

हे सोमदेव ! आनन्द प्राप्तिका लागि प्रेम र स्पर्धा प्रदर्शित गर्ने वाणी तिम्रो स्तुति गर्दछ। शोधित र ऐश्वर्यवान् सोमरस पनि आनन्दका लागि सञ्चरित हुन्छ।

**य ओजिष्ठस्तमा भर पवमान श्रवाय्यम्।**
**यः पञ्च चर्षणीरभि रयिं येन वनामहै ॥९॥**

हे सोमदेव ! तिमी समाजका पाँचै किसिमका सबै मानिसलाई प्राप्त हुने शक्तिवर्द्धक, प्रशंसनीय रस पूरै हामीलाई देऊ।

**सोमाः पवन्त इन्दवोऽस्मभ्यं गातुवित्तमाः।**
**मित्राः सुवाना अरेपसः स्वाध्यः स्वर्विदः ॥१०॥**

उचित मार्गको जानकारी भएको, मित्रजस्तै, पापरहित मनलाई राम्ररी एकाग्र गराउने, आत्मविद् यो पेलेर तयार पारेको सोमरस हाम्रा लागि शुद्ध गरिन्छ।

**सुष्वाणासो व्यद्रिभिश्चिताना गोरधि त्वचि।**
**इषमस्मभ्यमभितः समस्वरन् वसुविदः ॥११॥**

पृथ्वीका माथिल्लो तहमा रहने, ढुङ्गाले पेलेका, धनप्रदायक सोमले ऐश्वर्य प्रदान गर्छ।

**एते पूता विपश्चितः सोमासो दध्याशिरः ।**
**सूर्यासो न दर्शतासो जिगत्नवो ध्रुवा घृते ॥१२॥**

देख्नाखेरि सूर्यजस्तै तेजस्वी, शुद्ध, विलक्षण सोम दहीसहितको कलशमा छ र जलको सफा धारमा मिसिएर पवित्र हुन्छ।

**प्र सुन्वानस्यान्धसो मर्तो न वृत तद्वचः ।**
**अप श्वानमराधसं हता मखं न भृगवः ॥१३॥**

शोधित हुँदाखेरि सोमको विघ्नकारी शव्द सन्तोषी मानिसले नसुनून्। भृगुले मख नामका दानवलाई लखेटेझैं यज्ञस्थलबाट कुकुर लखेट।

**आ जामिरत्के अव्यत भुजे न पुत्र ओण्योः ।**
**सरज्जारो न योषाणां वरो न योनिमासदम् ॥१४॥**

दाजुभाइजस्तै अति प्रिय सोम, मातापितका भुजामा रक्षित पुत्रझैं चाल्नीबाट प्रवाहित भएर कलशमा खस्दछ। जार स्त्रीतिर वा वर कन्यातिर आकृष्ट भएझैं सोम पनि कलशभित्र प्रवेश गर्दछ।

**स वीरो दक्षसाधनो वि यस्तस्तम्भ रोदसी ।**
**हरिः पवित्रे अव्यत वेधा न योनिमासदम् ॥१५॥**

पौष्टिक तत्त्व र रसायनले युक्त वीर सोम द्यावापृथिवीमा आफ्नो तेज व्याप्त गराउँछ। याजक यजमानका घरमा प्रविष्ट भएझैं शोधित हरियो आभाले युक्त सोमरस छानिएर कलशमा प्रवेश गर्दछ।

**अव्यो वारेभिः पवते सोमो गव्ये अधि त्वचि ।**
**कनिक्रदद्वृषा हरिरिन्द्रस्याभ्येति निष्कृतम् ॥१६॥**

यो सोम ऊनीले बनेको चालनीले छानिन्छ। भूमिका पृष्ठ भागमा स्थापित बलवान् सोम ध्वनि गर्दै इन्द्रदेवका नजिकै पुग्दछ।

## [सूक्त – १०२]

**ऋषि** – त्रित आप्त्य। **देवता** – पवमान सोम। **छन्द** – उष्णिक्।

**क्राणा शिशुर्महीनां हिन्वन्नृतस्य दीधितिम्। विश्वा परि प्रिया भुवदध द्विता ॥१**

यज्ञकर्ता र जलको महान् पुत्र सोम हो। यज्ञ प्रकाशित गर्न आफ्ना रसलाई यसले प्रेरित गर्दछ। यो सबै हविष्यान्नमा व्याप्त हुँदै द्युलोक र पृथ्वीलोकमा व्याप्त रहन्छ।

**उप त्रितस्य पाष्योरभक्त यद् गुहा पदम्। यज्ञस्य सप्त धामभिरध प्रियम ॥२**

त्रित ऋषिका गुफामा ढुङ्गोजस्तै कडा दुई फल्याकका बीचमा फेला पर्ने सोमरसलाई ऋत्विक्हरूले गायत्री आदि सात छन्दले स्तुति गरे।

**त्रीणि त्रितस्य धारया पृष्ठेष्वेरया रयिम्। मिमीते अस्य योजना वि सुक्रतुः ॥३**

तीनै भुवनमा तीनै काल व्याप्त रहने हे दिव्य सोमदेव ! तिमी आफ्ना रसका धाराले इन्द्रदेवलाई प्रेरित गर। ठूला याजकहरू उनलाई उत्तम स्तोत्रले गुणगान गर्दछन्।

**जज्ञानं सप्त मातरो वेधामशासत श्रिये। अयं ध्रुवो रयीणां चिकेत यत् ॥४॥**

सात माताबाट उत्पन्न बुद्धिको शक्ति बढाउने प्रयत्नमा लागेको यस सोमले धनसम्पदा राम्ररी चिनेको छ।

**अस्य व्रते सजोषसो विश्वे देवासो अद्रुहः। स्पार्हा भवन्ति रन्तयो जुषन्त यत् ॥**

प्रेमपूर्वक प्रसन्न रहने, यज्ञको व्रतमा लागेका र परस्पर द्रोहरहित सबै देवता सोमरस पान गर्न सङ्गठित हुन्छन्।

**यमी गर्भमृतावृधो दृशे चारुमजीजनन्। कविं मंहिष्ठमध्वरे पुरुस्पृहम् ॥६॥**

व्यापक, ज्ञानी, पूज्य, अभीष्ट सोमलाई यज्ञको विस्तार गर्ने याजकले स्थापित गरे।

**समीचीने अभि त्मना यह्वी ऋतस्य मातरा। तन्वाना यज्ञमानुषग्यदञ्जते ॥७॥**

यज्ञ विस्तारक याजकले सोमरस जलमा मिसाउँदा यो सोमरस आफैं सबै तिरबाट एकत्र भएर महान् यज्ञको निर्माण गर्ने द्युलोक र पृथिवीतर्फ गमन गर्दछ।

ऋत्वा शुक्रेभिरक्षभिर्ऋणोरप व्रजं दिवः। हिन्वन्नृतस्य दीधितिं प्राध्वरे ॥८॥
हे सोमदेव ! तिमी यस अहिंसित यज्ञमा ऋतलाई तेजस्वी बनाउँदै ज्ञान र कर्मका तेजस्वी सामर्थ्यले द्युलोकको अन्धकार हटाऊ।

[सूक्त - १०३]

**ऋषि** - द्वित आप्त्य। **देवता** - पवमान सोम। **छन्द** - उष्णिक्।

**प्र पुनानाय वेधसे सोमाय वच उद्यतम्। भृतिं न भरा मतिभिर्जुजोषते ॥१॥**
हे स्तोता हो ! पोषण प्राप्त गराउनेहरूले पोषितका लागि प्रयत्न गरेझैं तिमी यी पवित्र हुँदै गरेका स्तुतिले हर्षित हुने, ज्ञानी सोमका लागि प्रेरक मन्त्रको गायन गर।

**परि वाराण्यव्यया गोभिरञ्जानो अर्षति। त्री षधस्था पुनानः कृणुते हरिः ॥२॥**
गाईको दुधमा मिसिएको सोमरस अविनाशी चाल्नीतिर जान्छ। परिष्कृत हुँदै हरियो आभासम्पन्न सोमरस तीन स्थानमा स्थापित हुन्छ।

**परि कोशं मधुश्चुतमव्यये वारे अर्षति। अभि वाणीर्ऋषीणां सप्त नूषत ॥३॥**
पवित्र भएको सोमले आफ्नो मधुर रस पात्रमा पुऱ्याउँछ। ऋषिका सात पदयुक्त वाणीले यी सोमदेवको प्रार्थना गर्दछ।

**परि णेता मतीनां विश्वदेवो अदाभ्यः। सोमः पुनानश्चम्वोर्विशद्धरिः ॥४॥**
असल मार्गमा बुद्धि प्रेरित गर्ने, अहिंसित, देवताको प्रिय, शोधित हरियो आभासम्पन्न सोमलाई पेलेर रस निकाल्ने ढुङ्गामा पुऱ्याइन्छ।

**परि दैवीरनु स्वधा इन्द्रेण याहि सरथम्। पुनानो वाघद्वाघद्भिरमर्त्यः ॥५॥**
हे सोमदेव ! स्तोताबाट स्तुत्य, अविनाशी, शोधित भइरहेका तिमी दैवी बलअनुसार एकै रथमा बसेर इन्द्रदेवसित हिँड।

**परि सप्तिर्न वाजयुर्देवो देवेभ्यः सुतः। व्यानशिः पवमानो वि धावति ॥६॥**
देवताका लागि निकालेको, सर्वव्यापी, बलको कामना गर्ने, तेजस्वी, पवित्र सोमरस अश्व कुदेझैं चारैतिर प्रवाहित हुन्छ।

[सूक्त - १०४]

**ऋषि** - पर्वतकाण्व नारदकाण्व। **देवता** - पवमान सोम। **छन्द** - उष्णिक्।

**सखाय आ नि षीदत पुनानाय प्र गायत। शिशुं न यज्ञैः परि भूषत श्रिये ॥१॥**
हे ऋत्विक् मित्र हो ! यहाँ आएर बस र सोम शोधित गर्दाखेरि स्तुति गर। शिशुलाई गहनाले सजाएझैं यज्ञीय साधनले सोमरसलाई सजाओ।

**समी वत्सं न मातृभिः सृजता गयसाधनम्। देवाव्यं मदमभि द्विशवसम् ॥२॥**
हे ऋत्विक् हो ! घरको साधनजस्तो, दिव्य गुणको रक्षक, आनन्दवर्द्धक, दुवै खालका बल बढाउने यस सोमलाई आमासित छोराछोरी टाँसिएझैं पारेर पानीमा मिसाओ।

**पुनाता दक्षसाधनं यथा शर्धाय वीतये। यथा मित्राय वरुणाय शंतमः ॥३॥**
शक्ति प्राप्त हुने र मित्रवरुणले सुख पाउने गरी सोमरस शोधित गर।

**अस्मभ्यं त्वा वसुविदमभि वाणीरनूषत। गोभिष्टे वर्णमभि वासयामसि ॥४॥**
हे सोमदेव ! तिमी धन प्रदान गर्दछौ। तिम्रो धन हामीलाई प्राप्त होस् भनेर हाम्रो वाणी तिमीलाई प्रार्थना गर्दछ। हामी तिम्रो रस गाईका दुधमा मिसाउँछौं।

**स नो मदानां पत इन्दो देवप्सरा असि। सखेव सख्ये गातुवित्तमो भव ॥५॥**
हे आनन्दका स्वामी सोमदेव ! तिमी तेजस्वी स्वरूपका छौ। एउटा मित्रले अर्को मित्रलाई पथप्रदर्शन गरेझैं हामीलाई तिमी उचित मार्गदर्शन गराऊ।

**सनेमि कृध्यस्मदा रक्षसं कं चिदत्रिणम्। अपादेवं द्वयुमंहो युयोधि नः ॥६॥**
हे सोमदेव ! हामीलाई आफ्नो अभिन्न मित्र बनाऊ। हाम्रो हानी गर्ने छलकपट भएका, मनभित्र वा बाहिर फरकफरक विचार हुने दोहोरो स्वभावका कपटीहरू जोसुकै भए पनि उनीहरूलाई मार र हामीलाई पापमुक्त गराऊ।

[सूक्त - १०५]

**ऋषि** - पर्वतकाण्व नारदकाण्व। **देवता** - पवमान सोम। **छन्द** - उष्णिक्।

**तं वः सखायो मदाय पुनानमभि गायत। शिशुं न यज्ञैः स्वदयन्त गूर्तिभिः ॥१॥**

हे मित्र हो ! आनन्ददायी सोमरस पेलेर तयार गर्दा प्रार्थना गर। शिशुलाई गहनाले सिंगारेझैं यज्ञ र स्तुतिले यसलाई सुहाउँदिलो बनाओ।

**सं वत्सइव मातृभिरिन्दुर्हिन्वानो अज्यते। देवावीर्मदो मतिभिः परिष्कृतः ॥२॥**

देवताको संरक्षक, प्रसन्नता प्रदायक, स्तुतिले शोधित र याजकको प्रेरक सोमरसलाई जलमा मिसाइन्छ। आमाले छोराछोरी नुहाइदिएझैं सोमलाई जलले शुद्ध पारिन्छ।

**अयं दक्षाय साधनोऽयं शर्धाय वीतये। अयं देवेभ्यो मधुमत्तमः सुतः ॥३॥**

बल वृद्धिको साधनका रूपमा मधुरतम सोमरस देवताले पिउनका लागि विधिवत् निकालिन्छ। देवताहरू शक्ति र सामर्थ्यले सम्पन्न बन्नका लागि यो पान गर्दछन्।

**गोमन्न इन्दो अश्ववत्सुतः सुदक्ष धन्व। शुचिं ते वर्णमधि गोषु दीधरम् ॥४॥**

रस निकालिसकेपछि हे बलशाली सोमदेव ! हामीलाई गाई, घोडाले युक्त धन प्रदान गर। त्यसपछि तिमी गाईका दुधमा मिसिएर पवित्र सेतो वर्णको बन।

**स नो हरीणां पत इन्दो देवप्सरस्तमः। सखेव सख्ये नर्यो रुचे भव ॥५॥**

हे हरियो वर्णका सोमदेव ! तेजस्विताका पुञ्ज र मानवका हितकारी भएर तिमी हाम्रा तेजस्वितामा पनि प्रखरता ल्याइदेऊ। एउटा मित्र अर्को मित्रको सहयोगका लागि तयार रहेझैं व्यवहार हामीसित गर।

**सनेमि त्वमस्मदाँ अदेवं कं चिदत्रिणम्। साह्वाँ इन्दो परि बाधो अप द्वयुम् ॥६**

हे सोमदेव ! हाम्रा लागि पुरातन सुख प्रकट गर र सुखमा बाधा हाल्ने शत्रु संहार गर। मनभित्र र बाहिर फरकफरक विचार राख्ने र बोल्ने गरेका दुष्टलाई समाप्त गर। दिव्य गुणरहित स्वार्थी शत्रु पनि संहार गर।

[सूक्त - १०६]

**ऋषि** - अग्नि चक्षुमानव मनु। **देवता** - पवमान सोम। **छन्द** - उष्णिक्।

**इन्द्रमच्छ सुता इमे वृषणं यन्तु हरयः। श्रुष्टी जातास इन्दवः स्वर्विदः ॥१॥**

भर्खर बनेको, आत्मज्ञान वृद्धि गर्ने हरियो आभासम्पन्न सोम पराक्रमी इन्द्रदेवलाई चाँडै प्राप्त होस्।

**अयं भराय सानसिरिन्द्राय पवते सुतः। सोमो जैत्रस्य चेतति यथा विदे। २॥**

युद्धका समयमा सेवन गर्न योग्य सोमरस इन्द्रदेवका लागि तयार छ। विजयको कामना गर्ने इन्द्रदेवलाई यस सोमरसले विशेष जोस दिन्छ भन्ने सबैले जान्दछन्।

**अस्येदिन्द्रो मदेष्वा ग्राभं गृभ्णीत सानसिम्। वज्रं च वृषणं भरत्समप्सुजित् ॥**

सेवनीय सोमपानले आनन्दित भएर जल जितेका इन्द्रदेव धनुष र वज्र धारण गर्छन्।

**प्र धन्वा सोम जागृविरिन्द्रायेन्दो परि स्रव। द्युमन्तं शुष्ममा भरा स्वर्विदम् ॥४**

हे सोमदेव ! स्फूर्तिले सम्पन्न भएर तिमी इन्द्रदेवका निम्ति कलशमा प्रवाहित होऊ। हामीलाई तेजवर्द्धक र ज्ञानवर्द्धक शक्तिले पूर्ण गराऊ।

**इन्द्राय वृषणं मदं पवस्व विश्वदर्शतः। सहस्रयामा पथिकृद्विचक्षणः ॥५॥**

हे सोमदेव ! तिमी सर्वद्रष्टा, ज्ञानवान्, हजारौं मार्गका निर्माता र ज्ञाता हौ। त्यसैले इन्द्रदेवका निम्ति बलशाली र आनन्ददायक रस प्रदान गर।

**अस्मभ्यं गातुवित्तमो देवेभ्यो मधुमत्तमः। सहस्रं याहि पथिभिः कनिक्रदत् ॥**

हे सोम ! तिमी असल पथप्रदर्शक र देवताका प्रिय हौ। त्यसैले ध्वनि गर्दै हजारौं मार्गबाट प्रवाहित होऊ।

**पवस्व देववीतय इन्दो धाराभिरोजसा। आ कलशं मधुमान्त्सोम नः सदः ॥७**

हे सोमदेव ! देवताले सेवन गर्नका लागि वेगपूर्वक धारासँगै कलशमा प्रवाहित होऊ। आनन्ददायक हे सोमदेव ! हाम्रा यस कलशमा आएर तिमी स्थित होऊ।

तव द्रप्सा उदप्रुत इन्द्रं मदाय वावृधुः। त्वां देवासो अमृताय कं पपुः ॥८॥
जलमा मिसिने तिम्रा रसले इन्द्रदेवलाई आनन्द र यश बढाउँछ। देवता अमरत्व प्राप्त गर्न सोमपान गर्दछन्।

आ नः सुतास इन्दवः पुनाना धावता रयिम्। वृष्टिद्यावो रीत्यापः स्वर्विदः ॥९
आकाशबाट प्राणदायी वर्षा गराउने, शोधित रसरूपी हे दिव्य सोम ! ऐश्वर्य प्रदान गर।

सोमः पुनान ऊर्मिणाव्यो वारं वि धावति। अग्रे वाचः पवमानः कनिक्रदत् ॥
स्तुतिपछि पवित्र हुँदै, ध्वनि गर्दै, शोधित भएको सोमरस प्रवाहका साथ अविनाशी चालनीले छानिँदै जान्छ।

धीभिर्हिन्वन्ति वाजिनं वने क्रीळन्तमत्यविम्।
अभि त्रिपृष्ठं मतयः समस्वरन् ॥११॥
जल मिसिएको, शक्तिशाली सोम स्तुतिगान गर्दै ऋत्विक्हरूद्वारा चालनीले छानिन्छ। अन्तरिक्ष, वनस्पति र जीवजगत्‌रूपी तीन पात्रमा विद्यमान त्यो दिव्य सोमको वन्दना ज्ञानीहरूले गर्दछन्।

असर्जि कलशाँ अभि मीढहे सप्तिर्न वाजयुः। पुनानो वाचं जनयन्नसिष्यदत् ॥
पोषक तत्त्वयुक्त, जलमा मिसिने, सोम पात्रमा अडिएको हुन्छ। छानिँदै गरेको त्यो सोमरस युद्धमा जाने अश्वका जसरी नै तीव्र गतिले पात्रभित्र पुग्दछ।

पवते हर्यतो हरिरति ह्वरांसि रंह्या। अभ्यर्षन्स्तोतृभ्यो वीरवद्यशः ॥१३॥
प्रशंसनीय हरियो आभाको सोम वेगयुक्त प्रवाहले आफ्नो अशुद्ध भाग शुद्ध गर्दै तलतिर रहेको कलशमा चुहुन्छ। हे सोमदेव ! तिमी ऋत्विक्हरूलाई पुत्र वा अन्नसम्बन्धी कीर्ति प्रदान गर।

अया पवस्व देवयुर्मधोर्धारा असृक्षत। रेभन्पवित्रं पर्येषि विश्वतः ॥१४॥
हे सोमदेव ! तिमी देवता भेट्ने रहरले शोधित हुँदाखेरि अविरल धाराका साथ शब्दनाद गर्दै मधुर भएर प्रचुर मात्रामा स्रवित भइदेऊ।

[सूक्त - १०७]

ऋषि – सप्तर्षिगण। देवता – पवमान सोम। छन्द – प्रगाथ द्विपदा विराट् बृहती।

परीतो षिञ्चता सुतं सोमो य उत्तमं हविः।
दधन्वाँ यो नर्यो अप्स्वन्तरा सुषाव सोममद्रिभिः ॥१॥
हे ऋत्विक हो ! मानिसको हितैषि, ढुङ्गामा पेलिएको, जल मिसिएको सोम देवताको उत्तम हवि हो।

नूनं पुनानोऽविभिः परि स्रवादब्धः सुरभिन्तरः।
सुते चित्त्वाप्सु मदामो अन्धसा श्रीणन्तो गोभिरुत्तरम् ॥२॥
छानिएपछि तिमीलाई अन्न आदि र गाईका अविनाशी, अति सुगन्धित, शोधित हुने हे सोमदेव ! तिमीलाई जलमा मिसाएर सेवन योग्य बनाइन्छ। दुधसित मिसाइन्छ।

परि सुवानश्चक्षसे देवमादनः क्रतुरिन्दुर्विचक्षणः ॥३॥
सबैले हेर्नका लागि देवताको आनन्द बढाउने, यज्ञको साधनरूप, ज्ञानसम्पन्न, तेजस्वी सोम कलशमा रहोस्।

पुनानः सोम धारयापो वसानो अर्षसि।
आ रत्नधा योनिमृतस्य सीदस्युत्सो देव हिरण्ययः ॥४॥
शोधनका क्रममा जलले संयुक्त भएर अविरल धाराका रूपमा प्रवाहित हुँदै तिमी यज्ञ पात्रमा प्रतिष्ठित हुन्छौ। ऐश्वर्यदाता, स्वर्णाभ चम्किलो, स्वच्छ हे सोमदेव !

दुहान ऊधर्दिव्यं मधु प्रियं प्रत्नं सधस्थमासदत्।
आपृच्छ्यं धरुणं वाज्यर्षति नृभिर्धूतो विचक्षणः ॥५॥
यज्ञ कर्ताहरूले परिष्कृत गरेको मधुर आनन्ददायी, दिव्य रस सोम यज्ञवेदीमा स्थापित छ। निरीक्षणकर्ता याजकलाई यो सोम श्रेष्ठ यज्ञीय भावले सम्पन्न रूपमा प्राप्त हुन्छ।

पुनानः सोम जागृविरव्यो वारे परि प्रियः।
त्वं विप्रो अभवोऽङ्गिरस्तमो मध्वा यज्ञं मिमिक्ष नः ॥६॥
चैतन्य, प्रिय र पवित्र सोम शोधनयन्त्रबाट शुद्ध भएर तल खस्दछ। अङ्गिरस ऋषिको परम्परामा श्रेष्ठ हे सोमदेव ! बुद्धिवर्द्धक भएर हाम्रो यज्ञ मधुर रसले पवित्र गराऊ।

**सोमो मीढ्वान्पवते गातुवित्तम ऋषिर्विप्रो विचक्षणः ।**
**त्वं कविरभवो देववीतम आ सूर्यं रोहयो दिवि ॥७॥**

सर्वश्रेष्ठ मार्गदर्शक, ज्ञानी, मेधावी, सर्वद्रष्टा, अत्यन्त आनन्ददायक सोमरस परिष्कृत हुँदै छ। हे दूरदर्शी सोमदेव ! तिमी देवताका लागि अत्यन्त प्रिय छौ र तिमीले आकाशमा सूर्यदेवलाई स्थापित गरेका छौ।

**सोम उ षुवाणः सोतृभिरधि ष्णुभिरवीनाम् ।**
**अश्वयेव हरिता याति धारया मन्द्रया याति धारया ॥८॥**

याजकले पेलेर तयार पारेको सोम पवित्र भएर तलका भाँडामा प्रवाहित हुन्छ। यो सोम वेगपूर्वक हरियो रङ्गको आनन्ददायक धाराबाट पात्रमा जान्छ।

**अनूपे गोमान्गोभिरक्षाः सोमो दुग्धाभिरक्षाः ।**
**समुद्रं न संवरणान्यग्मन्मन्दी मदाय तोशते ॥९॥**

आनन्द प्राप्तिका लागि तयार गरिने, प्रकाशित, गाईको दुध मिसेको सोमरस पात्रमा पुगेर सबै नदीहरू आफ्नो आश्रयदाता समुद्रमा पुगेर अडिएझैं अडिन्छ।

**आ सोम सुवानो अद्रिभिस्तिरो वाराण्यव्यया ।**
**जनो न पुरि चम्वोर्विशद्धरिः सदो वनेषु दधिषे ॥१०॥**

ढुङ्गाले पेलेर तयार गरेको यो सोमरस शोधनयन्त्रबाट तलको बर्तनमा छानिन्छ। हरियो आभासम्पन्न सोमरस काठको बर्तनमा पुगेर सहर पसेको मानिसझैं त्यहीं अडिन्छ।

**स मामृजे तिरो अण्वानि मेष्यो मीढ्हे सप्तिर्न वाजयुः ।**
**अनुमाद्यः पवमानो मनीषिभिः सोमो विप्रेभिर्ऋक्वभिः ॥११॥**

बलवर्द्धक, परिपुष्ट, अश्वजस्तै प्रिय, ऋत्विक्ले ऊनीले छानेका सोमरस विद्वान्का स्तुतिले प्रशंसित हुँदै पवित्रता प्राप्त गर्दछ।

**प्र सोम देववीतये सिन्धुर्न पिप्ये अर्णसा ।**
**अंशोः पयसा मदिरो न जागृविरच्छा कोशं मधुश्चुतम् ॥१२॥**

देवताले पान गर्ने सोम पानीमा मिसाइन्छ। हर्षप्रदायक हुनुका साथै सोम स्फुर्तिदायक पनि छ। यो सोमरस जलसित मिसिएर मधुररस चुहाउने भाँडामा अडिन्छ।

**आ हर्यतो अर्जुने अत्के अव्यत प्रियः सूनुर्न मर्ज्यः ।**
**तमीं हिन्वन्त्यपसो यथा रथं नदीष्वा गभस्त्योः ॥१३॥**

प्रिय शिशुजस्तै संस्कारयुक्त स्वच्छ सोमरसलाई द्रुतगामी अश्व युद्धमा पठाइएझैं वेगपूर्वक हातले जलपात्रमा खन्याइन्छ।

**अभि सोमास आयवः पवन्ते मद्यं मदम् ।**
**समुद्रस्याधि विष्टपि मनीषिणो मत्सरासः स्वर्विदः ॥१४॥**

मानिसको हितैषि, ज्ञानदाता, आनन्दप्रदायक, शोधनयन्त्रबाट तलतिर बग्ने, आनन्ददायी सोम जलले भरिएका पात्रमा स्वतः शुद्ध हुँदै जम्मा हुन्छ।

**तरत्समुद्रं पवमान ऊर्मिणा राजा देव ऋतं बृहत् ।**
**अर्षन्मित्रस्य वरुणस्य धर्मणा प्र हिन्वान ऋतं बृहत् ॥१५॥**

प्रेरणादायी दिव्य सोम शुद्ध भएर, प्रकृतिमा रहेको विशाल सोमलाई समुद्रमा मित्र र वरुणदेवद्वारा प्रयोग गर्नका लागि स्थापित गरिन्छ।

**नृभिर्येमानो हर्यतो विचक्षणो राजा देवः समुद्रियः ॥१६॥**

ऋत्विक्हरूले शोधन गरेको, सबैको प्रियपात्र, विशेष ज्ञानवर्द्धक, राजासरिको दिव्य सोम इन्द्रदेवका निमित्त शोधित भएर जलमा मिसिन्छ।

**इन्द्राय पवते मदः सोमो मरुत्वते सुतः ।**
**सहस्रधारो अत्यव्यमर्षति तमी मृजन्त्यायवः ॥१७॥**

हर्षप्रदायक, पेलेर तयार पारेको सोम मरुत्वान् इन्द्रदेवका लागि पवित्र हुन्छ। यो सोम पहिले सहस्र धाराका रूपमा शोधनयन्त्रबाट शुद्ध हुन्छ, त्यसपछि फेरि स्तोताहरू मन्त्रले यसको शोधन गर्दछन्।

पुनानश्चमू जनयन्मतिं कविः सोमो देवेषु रण्यति।
अपो वसानः परि गोभिरुत्तरः सीदन्वनेष्वव्यत ॥१८॥

ज्ञान प्रकट गर्ने, स्तुतिको प्रेरक, सम्पूर्ण ज्ञानसम्पन्न सोमरस चाल्नीबाट जलपात्रमाथि शोधित हुँदै इन्द्र आदि देवताका निकटमा जान्छ। जल मिसिएको त्यो सोम उत्तरोत्तर परिष्कृत हुँदै दुधमा मिसिएर काठका भाँडामा जम्मा हुन्छ।

तवाहं सोम रारण सख्य इन्दो दिवेदिवे।
पुरूणि बभ्रो नि चरन्ति मामव परिधीँरति ताँ इहि ॥१९॥

हे सोमदेव ! हामीलाई तिम्रो मित्रताको लाभ प्राप्त होस्। हामीलाई दुःख दिने अनेकौं खालका सबै व्यक्तिलाई तिमी नष्ट गर।

उताहं नक्तमुत सोम ते दिवा सख्याय बभ्र ऊधनि।
घृणा तपन्तमति सूर्यं परः शकुना इव पप्तिम ॥२०॥

हे समुज्ज्वल सोमदेव ! हामीलाई दिनरात तिम्रो निकटता प्राप्त होस्। हामी टाढाबाट चम्कने सूर्यदेव र तिमीलाई चराले झैं प्रत्यक्ष देख्दछौं।

मृज्यमानः सहस्त्य समुद्रे वाचमिन्वसि।
रयिं पिशङ्गं बहुलं पुरुस्पृहं पवमानाभ्यर्षसि ॥२१॥

उत्तम हातले निकाल्ने पवित्र सोमदेव ! तिमी शुद्ध गरिने कलशमा शब्द गर्दै प्रवाहित हुन्छौ र स्तोताका लागि प्रिय स्वर्ण आदि धन प्रदान गर्दछौ।

मृजानो वारे पवमानो अव्यये वृषाव चक्रदो वने।
देवानां सोम पवमान निष्कृतं गोभिरञ्जानो अर्षसि ॥२२॥

बलवर्द्धक, पवित्र चाल्नीले शोधित सोमरस जलमा अति वेगले प्रवाहित हुन्छ। हे शुद्धतायुक्त सोमदेव ! तिमी देवताका लागि गाईको दुधसित मिसिन्छौ र पवित्र पात्रमा स्थापित गरिन्छौ।

पवस्व वाजसातयेऽभि विश्वानि काव्या।
त्वं समुद्रं प्रथमो वि धारयो देवेभ्यः सोममत्सरः ॥२३॥

स्तोत्रले पवित्र भएका, विशिष्ट अन्नले पोषकतायुक्त, देवतालाई आनन्द दिने हे सोमदेव ! उदारता आदि विशिष्ट गुणले युक्त भएर यस श्रेष्ठ यज्ञमा पवित्र होऊ।

स तू पवस्व परि पार्थिवं रजो दिव्या च सोम धर्मभिः।
त्वां विप्रासो मतिभिर्विचक्षण शुभ्रं हिन्वन्ति धीतिभिः ॥२४॥

हे सोमदेव ! द्युलोक र पृथिवीलाई आफ्ना धारक सामर्थ्यले पवित्र बनाऊ। हे विशिष्ट द्रष्टा सोमदेव ! शुभ्र वर्ण भएका तिमीलाई बुद्धिमान् स्तोता औंलाले निचोर्दछन्।

पवमाना असृक्षत पवित्रमति धारया।
मरुत्वन्तो मत्सरा इन्द्रिया हया मेधामभि प्रयांसि च ॥२५॥

मरुत्हरूका मित्र, हर्ष प्रदाता, इन्द्रका प्रिय, बुद्धि र अन्नले युक्त यज्ञमा प्रयुक्त हुने र शुद्ध रहने सोमरस शोधनयन्त्रबाट तल खस्दछ।

अपो वसानः परि कोशमर्षतीन्दुर्हियानः सोतृभिः।
जनयञ्ज्योतिर्मन्दना अवीवशद्गाः कृण्वानो न निर्णिजम् ॥२६॥

ऋत्विक्हरूले पेलेर तयार गरेको, जलमा मिसिएको सोमरस कलशमा एकत्र हुन्छ। ज्योतिष्मान्, प्रकाशको निर्माण गर्ने हे सोमदेव ! तिमी आनन्ददायी दुधले आच्छादित आफ्नो विशुद्ध रूप प्रकट गर।

## [सूक्त - १०८]

**ऋषि** - वासिष्ठ ऋजिश्वा भारद्वाज। **देवता** - पवमान सोम। **छन्द** - प्रगाथ गायत्री।

पवस्व मधुमत्तम इन्द्राय सोम क्रतुवित्तमो मदः। महि द्युक्षतमो मदः ॥१॥

हे सोमदेव ! अत्यन्त मधुर हविका विषयमा सबै कुरो जान्ने, श्रेष्ठ, तेजस्वी, आनन्द बढाउने भएकाले तिमी इन्द्रदेवलाई आनन्दित गर्नका लागि पवित्र होऊ।

यस्य ते पीत्वा वृषभो वृषायतेऽस्य पीता स्वर्विदः ।
स सुप्रकेतो अभ्यक्रमीदिषोऽच्छा वाजं नैतशः ॥२॥

हे सोमदेव ! बलशाली इन्द्रदेव तिमीलाई पान गरेपछि अरू बलशाली हुन्छन् । आत्मज्ञानीहरू तिम्रो पान गरेर अत्यधिक आनन्दित हुन्छन् । उत्तम ज्ञानी इन्द्रदेव तिम्रा बलले सङ्ग्राममा विजयी अश्वजस्तै शीघ्र शत्रुको धन आफ्नो अधिकारमा लिन्छन् ।

त्वं ह्यङ्ग दैव्या पवमान जनिमानि द्युमत्तमः । अमृतत्वाय घोषयः ॥३॥

पवित्र सोम तेजस्वी, दिव्य जन्मका विषयमा जान्ने र अमृत तत्त्व प्रकट गर्ने हो ।

येना नवग्वो दध्यङ्ङपोर्णुते येन विप्रास आपिरे ।
देवानां सुम्ने अमृतस्य चारुणो येन श्रवांस्यानशुः ॥४॥

सोमको सहायताले दध्यङ् ऋषिले नयाँ गाईको ढोका खोलेका थिए । त्यसैबाट विप्रले गाई प्राप्त गरे । त्यसका सहायताले देवता प्रसन्न हुँदा याजकले असल अमृत, अन्न आदि प्राप्त गर्दछन् । त्यस सोमले देवताका लागि अमरत्वको घोषणा गर्दछ ।

एष स्य धारया सुतोऽव्यो वारेभिः पवते मदिन्तमः । क्रीडन्नूर्मिरपामिव ॥५॥

अति हर्षप्रदायक, पानीका तरङ्गझैं क्रीडा गर्ने सोम रौंले बनेको चाल्नीमा छानिन्छ ।

य उस्रिया अप्या अन्तरश्मनो निर्गा अकृन्तदोजसा ।
अभि व्रजं तत्निषे गव्यमश्व्यं वर्मीव धृष्णवा रुज ॥६॥

सोमले आकाशमा बढ्दो बादलभित्रको जल आफ्ना शक्तिले छिन्नभिन्न गर्दछ र गाई एवं अश्वलाई सबै तिरबाट घेर्दछ । हे सोम ! कवचले युक्त वीरले झैं शत्रु विनाश गर ।

आ सोता परि षिञ्चताश्वं न स्तोममप्तुरं रजस्तुरम् । वनक्रक्षमुदप्रुतम् ॥७॥

हे याजक हो ! अश्वजस्तै गतिशील, प्रार्थनायोग्य, पानीजस्तै प्रवाहमान, किरणझैं शीघ्र गमन गर्ने, जलयुक्त सोमरस पेलेर तयार गर र त्यसमा दुध मिसाओ ।

सहस्रधारं वृषभं पयोवृधं प्रियं देवाय जन्मने ।
ऋतेन य ऋतजातो विवावृधे राजा देव ऋतं बृहत् ॥८॥

असङ्ख्य धाराले शोधित, सुखवर्द्धक, दुधमा मिसिएको, प्रिय सोम देवताका निम्ति संस्कारित गर । त्यो दिव्य गुणले संयुक्त सोम जलबाट प्रकट भएर बढ्दछ ।

अभि द्युम्नं बृहद्यश इषस्पते दिदीहि देव देवयुः । वि कोशं मध्यमं युव ॥९॥

हे अन्नका अधिपति र देदीप्यमान् सोमदेव ! तिमी देवतालाई प्राप्त हुन्छौ । हामीलाई तेजोमय एवं महान् कीर्ति प्रदान गर र कलशपात्रमा गएर त्यसलाई भरिदेऊ ।

आ वच्यस्व सुदक्ष चम्वोः सुतो विशां वह्निर्न विश्पतिः ।
वृष्टिं दिवः पवस्व रीतिमपां जिन्वा गविष्टये धियः ॥१०॥

राजाको जस्तै सबैलाई पालन गर्ने, बुद्धिशाली हे सोमदेव ! याजकको बुद्धि सन्मार्गतिर प्रेरित गर्दै अन्तरिक्षबाट बर्सिने पर्जन्यझैं तलका पात्रमा जम्मा हुने कृपा गर ।

एतमु त्यं मदच्युतं सहस्रधारं वृषभं दिवो दुहुः । विश्वा वसूनि बिभ्रतम् ॥११॥

आनन्ददायी, हजारौं धाराले कलशमा चुहुने, शक्तिवर्द्धक, सबै धनका स्वामी, तेजस्वी यो सोमको रस ऋत्विक्हरूले पेल्दछन् ।

वृषा वि जज्ञे जनयन्नमर्त्यः प्रतपञ्ज्योतिषा तमः ।
स सुष्टुतः कविभिर्निर्णिजं दधे त्रिधात्वस्य दंससा ॥१२॥

आफ्ना ज्योतिले अन्धकार हटाउने, बल उत्पादक सोम अविनाशी रूपमा चिनिन्छ । ज्ञानवान् याजकले स्तुति गरेको सोम आफ्नो विशुद्ध रूप धारण गर्दछ । तीनै लोकमा व्याप्त सोम यज्ञीय कर्मका लागि प्रवाहित हुन्छ ।

स सुन्वे यो वसूनां यो रायामानेता य इडानाम् । सोमो यः सुक्षितीनाम् ॥१३॥

ऋत्विक्हरूले सम्पत्ति, दुध आदि पदार्थ, भूमि र श्रेष्ठ सन्तानप्रदायक सोमको रस निकालेका छन् ।

यस्य न इन्द्रः पिबाद्यस्य मरुतो यस्य वार्यमणा भगः।
आ येन मित्रावरुणा करामह एन्द्रमवसे महे ॥१४॥

जुन सोमरस इन्द्रदेवले पान गर्दछन्, जसको पान मरुत्‌हरूले गर्दछन् र जसलाई अर्यमा वा भगदेवले पान गर्दछन्, मित्र, वरुण एवं इन्द्रलाई जुन सोमको संरक्षणका लागि बोलाउँछन्, उही सोम हामी निचोरेर तयार गर्दछौं।

इन्द्राय सोम पातवे नृभिर्यतः स्वायुधो मदिन्तमः। पवस्व मधुमत्तमः ॥१५॥

हे सोमदेव ! याजकबाट एकत्रित, अत्यन्त मधुर, आनन्ददायक, श्रेष्ठ आयुधले युक्त इन्द्रदेवले पान गर्नका लागि तिमी प्रवाहित होऊ।

इन्द्रस्य हार्दि सोमधानमा विश समुद्रमिव सिन्धवः।
जुष्टो मित्राय वरुणाय वायवे दिवो विष्टम्भ उत्तमः ॥१६॥

हे सोमदेव ! समुद्रमा नदी प्रवेश गरेझैं इन्द्रदेवका हृदयरूपी कलशमा प्रवेश गर। तिमी मित्र, वरुण, वायुदेव र इन्द्रदेवका निमित्त स्नेहयुक्त रस प्रवाहित गर।

[सूक्त - १०९]

ऋषि - अग्निधिष्ण्य ऐश्वर। देवता - पवमान सोम। छन्द - द्विपदा विराट्।

परि प्र धन्वेन्द्राय सोम स्वादुर्मित्राय पूष्णे भगाय ॥१॥

हे स्वादिष्ट सोमदेव ! तिमी इन्द्र, मित्र, पूषा र भगदेवका लागि प्रवाहित होऊ।

इन्द्रस्ते सोम सुतस्य पेयाः क्रत्वे दक्षाय विश्वे च देवाः ॥२॥

हे सोमदेव ! तिमीबाट निकालेको रस उत्तम ज्ञान र बल प्राप्तिका लागि इन्द्रदेवसहित सबै देवताले पान गरुन्।

एवामृताय महे क्षयाय स शुक्रो अर्ष दिव्यः पीयूषः ॥३॥

हे सोम ! प्रकाशमान, दिव्य लोकमा देवताले सेवन गर्नका लागि प्रकट भएका तिमी अमरत्वसम्म पुग्नका लागि गतिशील होऊ।

पवस्व सोम महान्त्समुद्रः पिता देवानां विश्वाभि धाम ॥४॥

हे सोमदेव ! विस्तृत समुद्रजस्तै पोषण गर्ने तिमी देवताका सबै आवासस्थलरूपी पात्रमा विद्यमान रहन्छौ।

शुक्रः पवस्व देवेभ्यः सोम दिवे पृथिव्यै शं च प्रजायै ॥५॥

हे कान्तिमान् सोमदेव ! तिमी दिव्य गुणका लागि प्रवाहित होऊ। त्यसबाट आकाश, पृथ्वी र प्रजालाई सुख प्राप्त होस्।

दिवो धर्तासि शुक्रः पीयूषः सत्ये विधर्मन्वाजी पवस्व ॥६॥

हे सोमदेव ! तिमी तेजस्वी पेय र दिव्य गुणका धारक हौ। हे बलवान् सोम ! तिमी सत्यरूपी यज्ञकर्मका बीचमा परिष्कृत हुन्छौ।

पवस्व सोम द्युम्नी सुधारो महामवीनामनु पूर्व्यः ॥७॥

हे सोमदेव ! प्रकाशयुक्त, सोझा धाराले राम्ररी पात्रमा खस्ने तिमी पहिलेको जत्तिकै श्रेष्ठ छौ। पात्रमा तिमी स्वयं प्रवाहित होऊ।

नृभिर्येमानो जज्ञानः पूतः क्षरद्विश्वानि मन्द्रः स्वर्वित् ॥८॥

यो सोम याजकले पेलेर पवित्र, आनन्दमय र सर्वज्ञ रूपमा प्रकट भएको छ। त्यसले हामीलाई विभिन्न किसिमले ऐश्वर्य प्रदान गरोस्।

इन्दुः पुनानः प्रजामुराणः करद्विश्वानि द्रविणानि नः ॥९॥

ऊनीको चाल्नीले छानिएको पवित्र र तेजस्वी सोमरसले हामीलाई प्रजायुक्त सम्पूर्ण ऐश्वर्य प्राप्त गराओस्।

पवस्व सोम क्रत्वे दक्षायाश्वो न निक्तो वाजी धनाय ॥१०॥

हे सोमदेव ! स्वच्छ, शक्तिवर्द्धक भएर सँधिएको अश्वझैं बल र ऐश्वर्य प्रदान गर्नका लागि पात्रमा स्थिर होऊ।

तं ते सोतारो रसं मदाय पुनन्ति सोमं महे द्युम्नाय ॥११॥

हे सोमदेव ! साधकहरू तिम्रो रस हर्ष बढाउनका लागि शोधित गर्दछन्। तिमीलाई हामी दिव्य तेजरूपी ज्ञानका लागि शोधन गर्दछौं।

शिशुं जज्ञानं हरिं मृजन्ति पवित्रे सोमं देवेभ्य इन्दुम् ॥१२॥

नवजात शिशु सफा गरिएझैं ऋत्विक्‌हरू हरियो आभासम्पन्न सोमलाई देवताका लागि चाल्नीले शोधन गर्दछन्।

इन्दुः पविष्ट चारुर्मदायापामुपस्थे कविर्भगाय ॥१३॥

श्रेष्ठ ज्ञानसम्पन्न यो सोम सम्पत्तियुक्त हर्ष प्राप्तिका लागि जलसित मिसाइन्छ।

बिभर्ति चार्विन्द्रस्य नाम येन विश्वानि वृत्रा जघान ॥१४॥

जुन शरीरले इन्द्रदेवले सबै पापी संहार गरे, यो सोम उनैको त्यही कल्याणकारी शरीर धारण गर्दछ।

पिबन्त्यस्य विश्वे देवासो गोभिः श्रीतस्य नृभिः सुतस्य ॥१५॥

याजकले पेलेर निकालेको र गाईका दुध मिसाएको सोमरस सबै देवताले पान गर्दछन्।

प्र सुवानो अक्षाः सहस्रधारस्तिरः पवित्रं वि वारमव्यम् ॥१६॥

बलशाली र अनेकौं धाराले छानिने सोम ऊनीको शोधक चाल्नीबाट छानिएर चुहुन्छ।

स वाज्यक्षाः सहस्ररेता अद्भिर्मृजानो गोभिः श्रीणानः ॥१७॥

बलशाली, जलले शोधित, गाईको दुध आदिमा मिसिएको सोम छानिँदै जान्छ।

प्र सोम याहीन्द्रस्य कुक्षा नृभिर्येमानो अद्रिभिः सुतः ॥१८॥

ढुङ्गाले कुटेर निकालेका, ऋत्विक्‌हरूले विधिपूर्वक पवित्र गरिएका हे सोमदेव ! तिमी इन्द्रदेवको पेटरूपी कलशमा पस।

असर्जि वाजी तिरः पवित्रमिन्द्राय सोमः सहस्रधारः ॥१९॥

हजारौं धारामा प्रवाहित, चाल्नीले शोधित, बलशाली, ज्ञानवान् सोमरस इन्द्रदेवका निम्ति तयार गरिन्छ।

अञ्जन्त्येनं मध्वो रसेनेन्द्राय वृष्ण इन्दुं मदाय ॥२०॥

इन्द्रदेवको प्रसन्नताका लागि, सुखको वर्षा गराउने सोमरसलाई याजकहरू गाईको मिठो दुधमा मिसाउँछन्।

देवेभ्यस्त्वा वृथा पाजसेऽपो वसानं हरिं मृजन्ति ॥२१॥

हे सोमदेव ! तिम्रो जलमिश्रित हरियो आभासम्पन्न रस याजकहरू देवताका लागि शोधित गर्दछन्।

इन्दुरिन्द्राय तोशते नि तोशते श्रीणन्नुग्रो रिणन्नपः ॥२२॥

बलशाली सोमलाई तपस्याले तपाएर इन्द्रदेवका लागि राम्रो रीतिले शोधन गरिन्छ। यो सोमरस शोधित गर्दा जलमा मिश्रित गरिन्छ।

## [सूक्त - ११०]

**ऋषि** - त्र्यरुण त्रैवृष्ण पौरुकुत्स्य। **देवता** - पवमान सोम। **छन्द** - अनुष्टुप् विराट्।

पर्यू षु प्र धन्व वाजसातये परि वृत्राणि सक्षणिः।
द्विषस्तरध्या ऋणया न ईयसे ॥१॥

हे सोमदेव ! अन्न प्राप्तिका लागि उत्तम विधिले कलशमा अवस्थित होऊ। हामीलाई ऋणबाट मुक्त गर्ने तिमी शत्रु परास्त गर्न आक्रमण गर।

अनु हित्वा सुतं सोम मदामसि महे समर्यराज्ये।
वाजाँ अभि पवमान प्र गाहसे ॥२॥

हे सोमदेव ! रस पेलिसकेपछि तिमीलाई हामी विधिपूर्वक अर्चना गर्दछौं। हे शोधित सोम ! श्रेष्ठ राजाको संरक्षणका लागि शक्तिशाली भएर तिमी विरोधी सेनामाथि आक्रमण गर्नका गमन गर्दछौं।

अजीजनो हि पवमान सूर्यं विधारे शक्मना पयः।
गोजीरया रंहमाणः पुरन्ध्या ॥३॥

हे दिव्य सोमदेव ! तिमी किरणका माध्यमबाट अन्तरिक्ष र पृथ्वीमा जीवन गतिशील बनाउँछौ। आफ्ना क्षमताले जल धारण गर्ने आकाशभन्दा माथि सूर्यदेव उत्पन्न गर्छौ।

अजीजनो अमृत मर्त्येष्वाँ ऋतस्य धर्मन्नमृतस्य चारुणः।
सदासरो वाजमच्छा सनिष्यदत् ॥४॥

हे अमृतरूपी सोमदेव ! तिमीले सत्य र कल्याणकारी अमृत तत्त्व धारण गरेर अन्तरिक्षमा सूर्यदेवलाई मानिसका लागि उत्पन्न गरेका थियौ र देवताको सेवा गर्‍यौ। तिमी अन्न आदि वैभवका लागि सधैं सक्रिय रहन्छौ।

अभ्यभि हि श्रवसा ततर्दिथोत्सं न कं चिज्जनपानमक्षितम्।
शर्याभिर्न भरमाणो गभस्त्योः ॥५॥

हे सोमदेव ! प्रजाले पिउने अक्षय जलको स्रोत हातका औंलाले उपलब्ध गराएभैं तिमी अन्नप्रदायकका रूपमा चाल्नीबाट तल आउँछौ।

आदीं के चित्पश्यमानास आप्यं वसुरुचो दिव्या अभ्यनूषत।
वारं न देवः सविता व्यूर्णुते ॥६॥

कालान्तरमा जबसम्म सर्वग्राही अन्धकार निवारण गर्दैनौं, त्यस बेलासम्म यस सोमका द्रष्टा वसुरूपी दाजुभाइभैं हामी यस सोमको स्तुति गर्दछौं।

त्वे सो प्रथमा वृक्तबर्हिषो महे वाजाय श्रवसे धियं दधुः।
स त्वं नो वीर वीर्याय चोदय ॥७॥

हे सोमदेव ! प्रधान ऋत्विक्हरू श्रेष्ठ बल र अन्नका लागि तिम्रा विषयमा उच्च विचारले सम्पन्न छन्। हे वीर सोमदेव ! हामीलाई वीरताका निम्ति प्रेरित गर।

दिवः पीयूषं पूर्व्यं यदुक्थ्यं महो गाहाद्दिव आ निरधुक्षत।
इन्द्रमभि जायमानं समस्वरन् ॥८॥

सबैभन्दा पहिले यो स्तुत्य अमृत सर्वोच्च र सुविस्तृत द्युलोकबाट प्रकट हुन्छ, त्यसपछि इन्द्रदेवसमक्ष याजकहरू सोमको सस्वर स्तुति गर्दछन्।

अध यदिमे पवमान रोदसी इमा च विश्वा भुवनाभि मज्मना।
यूथे न निःष्ठा वृषभो वि तिष्ठसे ॥९॥

हे शोधित सोमदेव ! गाईका समूहमा अवस्थित वृषभजस्तै तिमी द्युलोक, पृथ्वी र सम्पूर्ण प्राणीका माझमा विद्यमान रहन्छौ।

सोमः पुनानो अव्यये वारे शिशुर्न क्रीळन्पवमानो अक्षाः।
सहस्रधारः शतवाज इन्दुः ॥१०॥

हजारौं धाराले चाल्नीबाट प्रवाहित यही सोम बालकभैं क्रीडा गर्दै असीम सामर्थ्यले युक्त र तेजस्वी रूपमा कलशमा पुग्दछ।

एष पुनानो मधुमाँ ऋतावेन्द्रायेन्दुः पवते स्वादुरूर्मिः।
वाजसनिर्वरिवोविद्वयोधाः ॥११॥

यो शोधित सोमरस मधुर, सुखद र सत्यले युक्त धाराका रूपमा इन्द्रदेवका निम्ति अन्न, धन र आयु प्रदान गर्दै प्रवाहित हुन्छ।

स पवस्व सहमानः पृतन्यून्त्सेधन्रक्षांस्यप दुर्गहाणि।
स्वायुधः सासह्वान्त्सोम शत्रून् ॥१२॥

हे सोमदेव तिमी युद्धको इच्छा गर्ने शत्रु पराजित गर्दै दुष्ट भाव भएका, कठिनताले वशमा आउने राक्षस संहार गर। तिमी उत्तम अस्त्रशस्त्रले युक्त भएर शत्रुलाई विनाश गर्दै प्रवाहित होऊ।

[सूक्त – १११]

ऋषि – अनानत पारुच्छेपि। देवता – पवमान सोम। छन्द – अत्यष्टि।

अया रुचा हरिण्या पुनानो विश्वा द्वेषांसि तरति स्वयुग्वभिः सूरो न स्वयुग्वभिः। धारा सुतस्य रोचते पुनानो अरुषो हरिः। विश्वा यद्रूपा परियात्यृक्वभिः सप्तास्येभिर्ऋक्वभिः ॥१॥

हरियो आभा भएको शोधित सोमरसका तेजले शत्रु नाश गर्दछ। अन्धकार हटाउने सूर्यको रश्मिजस्तै सोमरसको उत्तम धारा चम्कन्छ। शोधित हरियो आभासम्पन्न सोमरस चम्कन्छ। अनि प्रकाशका सात रङ्ग तेज र स्तोत्रले अनेक रूप धारण गर्दछ।

त्वं त्यत्पणीनां विदो वसु सं मातृभिर्मर्जयसि स्व आ दम ऋतस्य धीतिभिर्दमे। परावतो न साम तद्यत्रा रणन्ति धीतयः। त्रिधातुभिररुषीभिर्वयो दधे रोचमानो वयो दधे ॥२॥
हे सोमदेव ! तिमीले व्यापारीबाट धनसम्पदा प्राप्त गरेका छौ। यज्ञका आधारभूत जलले यज्ञस्थलमा उत्तम रूपमा तिमी पवित्र हुन्छौ। आनन्दित भएका याजकका स्थानबाट गुञ्जित हुने सामगान परदेखि सुनिन्छ। तीनै ठाउँमा देदीप्यमान हे सोमदेव ! याजकलाई तिमी उचित अन्न प्रदान गर्दछौ।

पूर्वामनु प्रदिशं याति चेकितत्सं रश्मिभिर्यतते दर्शतो रथो दैव्यो दर्शतो रथः। अग्मन्नुक्थानि पौंस्येन्द्रं जैत्राय हर्षयन्। वज्रश्च यद्भवथो अनपच्युता समत्स्वनपच्युता ॥३॥
हे सर्वज्ञ सोमदेव ! तिमी पूर्व दिशामा प्रस्थान गर्दा दिव्य र दर्शनीय तिम्रो रथ रश्मिका प्रभावले झन् तेजस्वी देखिन्छ। पुरुषार्थवर्द्धक स्तोत्र इन्द्रदेवसम्म पुग्दछ। त्यसपछि स्तोताहरू विजयका लागि उनलाई प्रसन्न गराउँछन् र उनले वज्र प्राप्त गर्दछन्। हे सोम र इन्द्रदेव ! त्यसपछि तिमीहरूका आपसी सहयोगले युद्धमा पराजित हुँदैनौ।

[सूक्त - ११२]

**ऋषि** - शिशु आङ्गिरस। **देवता** - पवमान सोम। **छन्द** - पङ्क्ति।

नानानं वा उ नो धियो वि व्रतानि जनानाम्।
तक्षा रिष्टं रुतं भिषग्ब्रह्मा सुन्वन्तमिच्छतीन्द्रायेन्दो परि स्रव ॥१॥
सिकर्मीले काठको काम राम्रो गर्न खोजेझैं, वैद्यले रोगीको हित चिताएझैं, ज्ञानवान् याज्ञिकले यजमानको कामना गरेझैं, हाम्रो बुद्धि विभिन्न कुराको खोजी गर्दछ। मानिसको कर्म पनि विभिन्न खालको हुन्छ। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

जरतीभिरोषधीभिः पर्णेभिः शकुनानाम्।
कार्मारो अश्मभिर्द्युभिर्हिरण्यवन्तमिच्छतीन्द्रायेन्दो परि स्रव ॥२॥
पुरानो छिप्पिएको काठ, चराको प्वाँख र तीखो ढुङ्गाका टुक्राले वाण बनाउने शिल्पी धनी बन्न रहर गरेझैं हामी सोम प्रवाहित हुने कामना गर्दछौं।

कारुरहं ततो भिषगुपलप्रक्षिणी नना।
नानाधियो वसूयवोऽनु गा इव तस्थिमेन्द्रायेन्दो परि स्रव ॥३॥
हामी राम्रो सिप तयार गर्दछौं। हाम्रा पिता पुत्रका चिकित्सक हुन्। माता र कन्याहरू पिस्ने काम गर्दछन्। हामी सबै भिन्नभिन्न कार्य गर्दछौं, तापनि गोठालाले गाईको सेवा गरेजस्तै हामी सबैले तिम्रो सेवा गर्दछौं। हे सोमदेव ! इन्द्रदेवका लागि प्रवाहित होऊ।

अश्वो वोळ्हा सुखं रथं हसनामुपमन्त्रिणः।
शेपो रोमण्वन्तौ भेदौ वारिन्मण्डूक इच्छतीन्द्रायेन्दो परि स्रव ॥४॥
भारी बोक्ने अश्वले राम्रा रथको कामना गरेझैं, साथीहरूले हाँसोठट्टा रुचाएझैं कामुक व्यक्तिले नारीको कामना गरेझैं, भ्यागुताले पानीको पोखरी खोजेझैं हामी सोमको कामना गर्दछौं। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

[सूक्त - ११३]

**ऋषि** - कश्यप मारीच। **देवता** - पवमान सोम। **छन्द** - पङ्क्ति।

शर्यणावति सोममिन्द्रः पिबतु वृत्रहा।
बलं दधान आत्मनि करिष्यन्वीर्यं महदिन्द्रायेन्दो परि स्रव ॥१॥
महान् पराक्रमी, वृत्रहन्ता इन्द्रदेव आफूभित्र उत्तम बल धारण गर्दै शर्यणावत् सरोवरमा स्थित सोम पान गरुन्। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

आ पवस्व दिशांपत आर्जीकात्सोम मीढ्वः।
ऋतवाकेन सत्येन श्रद्धया तपसा सुत इन्द्रायेन्दो परि स्रव ॥२॥
समस्त दिशाका स्वामी, कामना पूर्ति गर्ने हे सोमदेव सत्यको पालन गर्ने याजकका पवित्र स्तोत्रले श्रद्धा र तपयुक्त भएर तिम्रो पूजन गरेका छन्। त्यसैले तिमी आर्जीक देशबाट प्रवाहित होऊ। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

पर्जन्यवृद्धं महिषं तं सूर्यस्य दुहिताभरत्।
तं गन्धर्वाः प्रत्यगृभ्णन्तं सोमे रसमादधुरिन्द्रायेन्दो परि स्रव ॥३॥

सूर्यकी पुत्री उषाद्वारा वर्षाका जलमा वृद्धि भएको महान् सोम अन्तरिक्षबाट ल्याइएको हो। उसलाई वसुहरूले ग्रहण गरेर सोम नामका लहरामा स्थापित गरेका थिए। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

ऋतं वदन्नृतद्युम्न सत्यं वदन्त्सत्यकर्मन्।
श्रद्धां वदन्त्सोम राजन्धात्रा सोम परिष्कृत इन्द्रायेन्दो परि स्रव ॥४॥

सोम सत्यको कान्तिले युक्त सत्कर्म गर्दछ। हे तेजस्वी सोमदेव ! सत्य कर्म गर्दै श्रद्धायुक्त सत्य वचन बोल्दै र याजकबाट शोधित हुँदै इन्द्रदेवका लागि प्रवाहित होऊ।

सत्यमुग्रस्य बृहतः सं स्रवन्ति संस्रवाः।
सं यन्ति रसिनो रसाः पुनानो ब्रह्मणा हर इन्द्रायेन्दो परि स्रव ॥५॥

सत्यको सर्वोपरिता उद्घाटन गर्ने महान् सोमरसको धारा उचित किसिमले एकै साथ बगिरहेको छ। हे हरियो आभासम्पन्न सोमरस ! ब्रह्मपरायणहरूबाट शोधित भएर इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

यत्र ब्रह्मा पवमान छन्दस्यां वाचं वदन्।
ग्राव्णा सोमे महीयते सोमेनानन्दं जनयन्निन्द्रायेन्दो परि स्रव ॥६॥

सोमरसले देवतालाई आनन्दित गर्ने ब्राह्मणहरू छन्दमा बनाएका स्तोत्र उच्चारण गर्दै ढुङ्गाले पेलेर निकालेको सोमरसको पूजा गर्दछन्। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

यत्र ज्योतिरजस्रं यस्मिँल्लोके स्वर्हितम्।
तस्मिन्मां धेहि पवमानामृते लोके अक्षित इन्द्रायेन्दो परि स्रव ॥७॥

हे पवित्र सोमदेव ! सूर्यदेवको अखण्ड तेजको सुख प्राप्त हुने मृत्युरहित, विनाशरहित लोकमा हामीलाई तिमी राख। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

यत्र राजा वैवस्वतो यत्रावरोधनं दिवः।
यत्रामूर्यह्वतीरापस्तत्र माममृतं कृधीन्द्रायेन्दो परि स्रव ॥८॥

विवस्वान्‌का पुत्र राजा भएका, विशाल नदी बगेका, स्वर्गको द्वार भएका लोकमा हामी अमरत्व प्राप्त गरौँ। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

यत्रानुकामं चरणं त्रिनाके त्रिदिवे दिवः।
लोका यत्र ज्योतिष्मन्तस्तत्र माममृतं कृधीन्द्रायेन्दो परि स्रव ॥९॥

सूर्यदेव आफ्नो इच्छाअनुसार गतिशील भएका, तेजस्वी प्रजा भएका, तेस्तो लोकमा हामी अमरत्व प्राप्त गरौँ। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

यत्र कामा निकामाश्च यत्र ब्रध्नस्य विष्टपम्।
स्वधा च यत्र तृप्तिश्च तत्र माममृतं कृधीन्द्रायेन्दो परि स्रव ॥१०॥

सबै किसिमका अभिलाषाहरू पूरा हुने, सुख प्रदान गर्ने र तृप्तिकारक अन्न भएको, प्रतापी सूर्यदेवको स्थान भएका लोकमा हामीलाई अमरत्व प्रदान गर। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

यत्रानन्दाश्च मोदाश्च मुदः प्रमुद आसते।
कामस्य यत्राप्ताः कामास्तत्र माममृतं कृधीन्द्रायेन्दो परि स्रव ॥११॥

समृद्धिसँग आनन्दको वास भएको, हर्षदायी सम्पदा र ऐश्वर्य भएको, कामना पूर्ति हुने लोकमा हामीलाई त्यहाँ अमरत्व प्रदान गर। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

[सूक्त - ११४]

**ऋषि** - कश्यप मारीच। **देवता** - पवमान सोम। **छन्द** - पङ्क्ति।

**य इन्दोः पवमानस्यानु धामान्यक्रमीत्।**
**तमाहुः सुप्रजा इति यस्ते सोमाविधन्मन इन्द्रायेन्दो परि स्रव ॥१॥**

पवित्र तेजस्वी सोमका कार्यको अनुसरण गर्ने र पवित्र सोमको चित्तअनुकूल आचरण गर्नेलाई श्रेष्ठ सन्ततियुक्त गृहस्वामी भनिन्छ। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

**ऋषे मन्त्रकृतां स्तोमैः कश्यपोद्वर्धयन्गिरः।**
**सोमं नमस्य राजानं यो जज्ञे वीरुधां पतिरिन्द्रायेन्दो परि स्रव ॥२॥**

हे मन्त्रद्रष्टा कश्यप ऋषि ! स्तुतियुक्त वाणीले विस्तृत भएको, औषधिजस्तै प्रजाको रक्षा गर्ने सोमको पूजा गर। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

**सप्त दिशो नानासूर्याः सप्त होतार ऋत्विजः।**
**देवा आदित्या ये सप्त तेभिः सोमाभि रक्ष न इन्द्रायेन्दो परि स्रव ॥३॥**

सूर्यदेवलाई आश्रय प्रदान गर्ने सात दिशा, सात याज्ञिक र सात आदित्यसँगै हामीलाई संरक्षण प्रदान गर। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

**यत्ते राजञ्छृतं हविस्तेन सोमाभि रक्ष नः।**
**अरातीवा मा नस्तारीन्मो च नः किं चनाममदिन्द्रायेन्दो परि स्रव ॥४॥**

हे राजा सोमदेव ! तिम्रा लागि जुन हविष्यान्नको तयारी गरिएको छ, त्यसैबाट हाम्रो पोषण गर। कुनै पनि शत्रुले हामीलाई घात नगरोस् र हाम्रो कुनै पनि पदार्थ कुनै शत्रुले अपहरण नगरोस्। हे सोमदेव ! इन्द्रदेवका लागि तिमी प्रवाहित होऊ।

**॥इति नवमं मण्डलं समाप्तम्॥**

नवौं मण्डल सकियो

ॐ

ओम् भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्।

# ऋग्वेद - संहिता

## ॥अथ दशमं मण्डलम्॥

॥दसौं मण्डल॥

[सूक्त - १]

ऋषि – त्रित आप्त्य। देवता – अग्नि। छन्द – त्रिष्टुप्।

अग्रे बृहन्नुषसामूर्ध्वो अस्थान्निर्जगन्वान्तमसो ज्योतिषागात्।
अग्निर्भानुना रुशता स्वङ्ग आ जातो विश्वा सद्मान्यप्राः ॥१॥

बिहान सबैभन्दा पहिले अग्निदेव माथितिर मुख पारेझैं प्रज्वलित र स्थित हुन्छन्, अन्धकार हटाएर तेजमय रूपमा अघि आउँछन् र उत्तम तेजले सबैतिर प्रकाश छर्दछन्।

स जातो गर्भो असि रोदस्योरग्ने चारुर्विभृत ओषधीषु।
चित्रः शिशुः परि तमांस्यक्तून्प्र मातृभ्यो अधि कनिक्रदद्गाः ॥२॥

अग्निदेव द्यावापृथिवीका गर्भमा रहन्छन्। औषधिबाट जन्म लिएर सुन्दर स्थानमा प्रतिष्ठित हुन्छन्। अन्धकार परास्त गर्दछन् र शिशुझैं शब्द गर्दै मातानजिक जान्छन्।

विष्णुरित्था परममस्य विद्वाञ्जातो बृहन्नभि पाति तृतीयम्।
आसा यदस्य पयो अक्रत स्वं सचेतसो अभ्यर्चन्त्यत्र ॥३॥

विद्वान् विष्णुदेव उसरी नै जन्मिएर हुर्कंदै यस तृतीय लोक वा त्रित ऋषिको पालन गर्छन्। उनका मुखबाट उत्पन्न पोषक रसको आशा गर्दै याजकहरू अर्चना गर्दछन्।

अत उ त्वा पितुभृतो जनित्रीरन्नावृधं प्रति चरन्त्यन्नैः।
ता ईं प्रत्येषि पुनरन्यरूपा असि त्वं विक्षु मानुषीषु होता ॥४॥

हे विश्वका पालक अग्निदेव ! तिमी औषधि र अन्नका उत्पादक हुनाले सुकेका काठमा जान्छौ। मानवीय सभ्यताका लागि तिमी नै यज्ञ प्रदुर्भाव गर्दछौ। अन्न वृद्धिका लागि हामी हविष्यान्न समर्पित गर्दै तिम्रो अर्चना गर्दछौं।

होतारं चित्ररथमध्वरस्य यज्ञस्ययज्ञस्य केतुं रुशन्तम्।
प्रत्यर्धिं देवस्यदेवस्य मह्ना श्रिया त्वग्निमतिथिं जनानाम् ॥५॥

यज्ञीय कार्यमा ध्वजाको रूपले दीप्तिमान्, देवता आह्वान गर्ने, सबैका स्वामी, यजमानका लागि वन्दनीय इन्द्रदेवका नजिक पुग्ने अग्निदेवलाई ऐश्वर्य प्राप्तिका लागि हामी उचित किसिमले स्तुति गर्दछौं।

स तु वस्त्राण्यध पेशनानि वसानो अग्निर्नाभा पृथिव्याः।
अरुषो जातः पद इडायाः पुरोहितो राजन्यक्षीह देवान् ॥६॥

हे देदीप्यमान अग्निदेव ! तिमी पृथ्वीका केन्द्रस्थलमा स्वर्णजस्तै दीप्तिमान् भएर तेज धारण गर्दै उत्पन्न हुन्छौ। तिमी यज्ञस्थलका उत्तर वेदीमा स्थापित भएर आफ्ना तेजले शोभायमान हुँदै हामीबाट देवशक्तिका लागि समर्पित हविष्यान्न ग्रहण गर।

आ हि द्यावापृथिवी अग्न उभे सदा पुत्रो न मातरा ततन्थ।
प्र याह्यच्छोशतो यविष्ठाथा वह सहस्येह देवान् ॥७॥

हे अग्निदेव ! पुत्रले मातापितालाई धनआदिले सुखी गराएझैं तिमी दिव्यलोक र पृथ्वीलोकलाई व्यापक विस्तार प्रदान गर्दछौ। हे तरुण पुत्र ! यथोचित सहयोगका लागि मातापिताका नजिक जाऊ र उनीहरूको सहायता गर। हे शक्तिमान् अग्निदेव ! हाम्रा यस यज्ञमा तिमी इन्द्र आदि देवताहरूलाई पनि लिएर आऊ।

[सूक्त - २]

ऋषि - त्रित आप्त्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**पिप्रीहि देवाँ उशतो यविष्ठ विद्वाँ ऋतूँर्ऋतुपते यजेह।**
**ये दैव्या ऋत्विजस्तेभिरग्ने त्वं होतॄणामस्यायजिष्ठः ॥१॥**

सबैका लागि कल्याणकारी, नित्य नवीन रूपवान् हे अग्निदेव ! कामना पूर्ति गर्ने देवतालाई तिमी प्रशंसित गराऊ। हे ऋतुका ज्ञाता अग्निदेव ! तिमी ऋतुअनुसार नै दिव्यतासम्पन्न ऋत्विक्हरूलाई सहयोग गरेर यज्ञ सम्पन्न गराऊ, किनभने होताहरूमध्ये तिमी नै सर्वश्रेष्ठ छौ।

**वेषि होत्रमुत पोत्रं जनानां मन्धातासि द्रविणोदा ऋतावा।**
**स्वाहा वयं कृणवामा हवींषि देवो देवान्यजत्वग्निरर्हन् ॥२॥**

हे अग्निदेव ! मानिसको यज्ञ रुचाउने होता, पवित्रकर्ता, बुद्धिमान्, सत्यका संरक्षक र दाता तिमी हौ। हामी हव्य पदार्थले स्वाहा गर्दछौं, पूजित भएर देवताको सत्कार गर।

**आ देवानामपि पन्थामगन्म यच्छक्नवाम तदनु प्रवोळ्हुम।**
**अग्निर्विद्वान्त्स यजात्सेदु होता सो अध्वरान्त्स ऋतून्कल्पयाति ॥३॥**

हामी आफ्नो सामर्थ्यअनुसार देवत्वका उच्च लक्ष्यतर्फ गतिमान् होऔं। हाम्रो कार्य अनुकूलतापूर्वक पूर्ण होस्। मानिसका लागि यज्ञका सम्पादक अग्निदेव ऋतुअनुसार यज्ञ सम्पन्न गरुन्। उनी देवताका निम्ति आहुति सेवन गर्दछन्।

**यद्वो वयं प्रमिनाम व्रतानि विदुषां देवा अविदुष्टरासः।**
**अग्निष्टद्विश्वमा पृणाति विद्वान्येभिर्देवाँ ऋतुभिः कल्पयाति ॥४॥**

हे देवता हो ! हामी ज्ञानरहित मानिसले अज्ञानतावश व्रत भङ्ग गरेका छौं। यो कुरो जानेका अग्निदेवले हामीलाई जुन भावनाले देवता प्रसन्न हुने गरी यज्ञ पूर्ण गराऊन्।

**यत्पाकत्रा मनसा दीनदक्षा न यज्ञस्य मन्वते मर्त्यासः।**
**अग्निष्टद्धोता क्रतुविद्विजानन्यजिष्ठो देवाँ ऋतुशो यजाति ॥५॥**

अज्ञानग्रस्त मानिस मानसिक परिपक्वता ल्याउने विधिमा अनभिज्ञ रहन्छन्, तापनि त्यस नियमका विशेषज्ञ अग्निदेवसित राम्ररी परिचित छन्। उनी ऋतुअनुसार देवताका लागि यज्ञ गरेर हामीलाई सुख र आरोग्य प्रदान गर्दछन्।

**विश्वेषां ह्यध्वराणामनीकं चित्रं केतुं जनिता त्वा जजान।**
**स आ यजस्व नृवतीरनु क्षाः स्पार्हा इषः क्षुमतीर्विश्वजन्याः ॥६॥**

हे अग्निदेव ! तिमी सबै यज्ञका अग्रणी र इच्छा लागेका विशिष्ट ज्ञानका उत्पादक हौ। प्रजापतिद्वारा उत्पन्न भएका तिमी स्तवनयुक्त र सबैको हितकारी हविष्यान्न देवतालाई प्रदान गर।

**यं त्वा द्यावापृथिवी यं त्वापस्त्वष्टा यं त्वा सुजनिमा जजान।**
**पन्थामनु प्रविद्वान्पितृयाणं द्युमदग्ने समिधानो वि भाहि ॥७॥**

हे अग्निदेव ! तिमीलाई असल सृष्टिकर्ता प्रजापतिले द्युलोकमा सूर्यका रूपमा, पृथ्वीमा वैश्वानरका रूपमा, जलमा बडवानलका रूपमा र मेघमा विद्युत्का रूपमा सर्वत्र व्याप्त गराएका छन्। पितृहरूको गमन मार्ग राम्ररी चिनेर समिधाले तेजयुक्त हुँदै विशेष रूपले प्रकाशित होऊ।

[सूक्त - ३]

ऋषि - त्रित आप्त्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**इनो राजन्नरतिः समिद्धो रौद्रो दक्षाय सुषुमाँ अदर्शि।**
**चिकिद्वि भाति भासा बृहतासिक्नीमेति रुशतीमपाजन् ॥१॥**

हे अग्निदेव ! तिमी सबैका स्वामी, दिव्य गुणयुक्त, देदीप्यमान् शत्रुका लागि भयङ्कर, उपासकलाई इच्छित पदार्थ प्रदान गर्ने, सबै किसिमका शक्तिलाई विकसित गर्ने हौ भन्ने अनुभव गरिएको छ। सर्वज्ञाता तिमी प्रदीप्त भएर आफ्नो प्रकाश सर्वत्र फैलाउँदै निशाकालमा प्रकट हुन्छौ।

**कृष्णां यदेनीमभि वर्पसा भूज्जनयन्योषां बृहतः पितुर्जाम्।**
**ऊर्ध्वं भानुं सूर्यस्य स्तभायन्दिवो वसुभिररतिर्वि भाति ॥२॥**

पितारूपी सूर्यबाट उत्पन्न भएका अग्निदेव उषा कालमा प्रकट भएर अँधेरी रातलाई आफ्ना ज्वालाले परास्त गर्दछन्। त्यस बेला गतिशील अग्निदेव द्युलोकमाथि सूर्यको दीप्ति स्थापित गरेर स्वयं पनि प्रकाशित हुन्छन्।

भद्रो भद्रया सचमान आगात्स्वसारं जारो अभ्येति पश्चात्।
सुप्रकेतैर्द्युभिरग्निर्वितिष्ठन्रुशद्भिर्वर्णैरभि राममस्थात् ॥३॥

हितकारक अग्निदेव कल्याणकारिणी उषाद्वारा सेवित र प्रदीप्त हुन्छन्। शत्रुनाशक अग्निदेव आफ्ना दिदीबहिनीजस्ता उषासित जान्छन्। आफ्ना तेजका प्रभावले सर्वत्र विचरणशील हुँदै जाज्वल्यमान लप्काले रातको अन्धकार नष्ट गरेर प्रतिष्ठित हुन्छन्।

अस्य यामासो बृहतो न वग्नूनिन्धाना अग्नेः सख्युः शिवस्य।
ईड्यस्य वृष्णो बृहतः स्वासो भामासो यामन्नक्तवश्चिकित्रे ॥४॥

प्रज्वलित र गतिशील अग्निदेवको ज्वालारूपी किरण स्तोताका लागि हानिरहित छ। स्तोत्र प्राप्त गर्ने, सुखप्रद र कल्याणकारी र हेर्नमा राम्रो किरणले र अन्धकार हटाउँछ। शक्तिवर्द्धक र देदीप्यमान किरण यज्ञस्थलमा अग्निको प्रकाश फैलाउँछ।

स्वना न यस्य भामासः पवन्ते रोचमानस्य बृहतः सुदिवः।
ज्येष्ठेभिर्यस्तेजिष्ठैः क्रीडुमद्भिर्वर्षिष्ठेभिर्भानुभिर्नक्षति द्याम् ॥५॥

अग्निदेवको प्रज्वलित, विशाल, तेजस्वी, ज्वालारूपी किरण शब्दझैं व्याप्त भएर सर्वत्र आफ्नो आभा व्याप्त गरिरहेको छ। अग्निदेव उत्तम र विस्तृत वायुका प्रभावले खेल्दै किरणका माध्यमले दिव्यलोकलाई व्याप्त गराउँछन्।

अस्य शुष्मासो ददृशानपवेर्जेहमानस्य स्वनयन्नियुद्भिः।
प्रत्नेभिर्यो रुशद्भिर्देवतमो वि रेभद्भिररतिर्भाति विभ्वा ॥६॥

दर्शनयोग्य तेजस्वी अग्निदेव देवतातिर हवि लिएर जान्छन्। यिनको सामर्थ्यशाली र विकारनाशक किरण वायुका माध्यमबाट शब्दायमान हुन्छ। गतिशील, ऐश्वर्यसम्पन्न, महिमायुक्त, शाश्वत तेजले सम्पन्न, शब्द निकाल्ने, उज्ज्वल वर्णयुक्त र देवताहरूमा प्रमुख अग्निदेव आफ्ना आभाले प्रकाशमान हुन्छन्।

स आ वक्षि महि न आ च सत्सि दिवस्पृथिव्योररतिर्युवत्योः।
अग्निः सुतुकः सुतुकेभिरश्वै रभस्वद्भी रभस्वाँ एह गम्याः ॥७॥

हे अग्निदेव ! हाम्रा यज्ञमा सबै महान् देवताहरूसँग आऊ। द्युलोक र पृथ्वीका बीचमा सूर्यका रूपमा गमनशील तिमी यज्ञमा विराजमान होऊ। यजमानका लागि सुगम तरिकाले प्राप्त हुने गमनशील अग्निदेव शीघ्रगामी वायुरूप अश्वका सहयोगले हाम्रा यज्ञमा उपस्थित होऊन्।

[सूक्त - ४]

**ऋषि** - त्रित आप्त्य। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

प्र ते यक्षि प्र त इयर्मि मन्म भुवो यथा वन्द्यो नो हवेषु।
धन्वन्निव प्रपा असि त्वमग्न इयक्षवे पूरवे प्रत्न राजन् ॥१॥

हामी मननीय स्तोत्र उच्चारण गर्दै तिम्रा लागि आहुति प्रदान गर्दछौं। तिमी यज्ञस्थलमा विशेष रूपले विराजमान होऊ। हे प्राचीन दीप्तिमान् अग्निदेव ! तिमी याज्ञिकहरूका लागि मरुस्थलमा जल उपलब्ध भएजस्तै शान्तिप्रद छौ।

यं त्वा जनासो अभि सञ्चरन्ति गाव उष्णमिव व्रजं यविष्ठ।
दूतो देवानामसि मर्त्यानामन्तर्महाँश्चरसि रोचनेन ॥२॥

हे नित्य युवा एवं बलिष्ठ अग्निदेव ! जाडोले आत्तिएका गाईले गोठको आड लिएझैं मानिसले तिम्रो आश्रय लिने गर्दछन्। तिमी देवता र मानिसका सन्देशवाहक हौ। तिमी महिमाशाली भएर द्युलोक र पृथिवीका बीचमा हवि वहन गर्दै अन्तरिक्षमा प्रकाशमान भएर सञ्चरित हुन्छौ।

शिशुं न त्वा जेन्यं वर्धयन्ती माता बिभर्ति सचनस्यमाना।
धनोरधि प्रवता यासि हर्यञ्जिगीषसे पशुरिवावसृष्टः ॥३॥

हे अग्निदेव ! आफ्ना सन्तान पुष्ट गराउनका लागि आमाले आफूनजिक राखेझैं धर्तीमाताले तिमी विजयशीललाई संवर्द्धित गर्दै नजिकै धारण गर्छिन्। बन्धनबाट छुटेको पशु गोठतिर जान लागेझैं तिमी अन्तरिक्षका विशाल मार्गबाट तलका लोकमा प्रेरित हुँदै जान्छौ।

मूरा अमूर न वयं चिकित्वो महित्वमग्ने त्वमङ्ग वित्से।
शये वव्रिश्चरति जिह्वयादन्रेरिह्यते युवतिं विश्पतिः सन् ॥४॥

हे ज्ञानवान् अग्निदेव ! हामी अज्ञानग्रस्त मानिस तिम्रो महिमाबाट अनभिज्ञ छौं। हे चैतन्य अग्निदेव ! तिमी स्वयं नै आफ्नो महिमाका ज्ञाता छौ। साकार भएर निश्चिन्त शयन गर्ने, ज्वालारूपी जिब्राले हविष्यान्न ग्रहण गरी विचरण गर्ने तिमी प्रजाका अधिपति राजाजस्तै छौ र पत्नीका रूपमा आहुति ग्रहण गर्दछौ।

कूचिज्जायते सनयासु नव्यो वने तस्थौ पलितो धूमकेतुः।
अस्नातापो वृषभो न प्र वेति सचेतसो यं प्रणयन्त मर्ताः ॥५॥

नयाँ अग्निदेव सुकेका वनस्पतिमा प्रत्येक दिन जतासुकै प्रकट हुने गर्दछन् र धुवाँरूपी पताका भएका, पिङ्गल वर्णका, तेजयुक्त भएर जङ्गलमा रहेका छन्। तिर्खाएको साँढे जलतर्फ गएझैं स्नानविनै शुद्ध भएका अग्निदेव जङ्गलमा जान्छन्। ती अग्निदेवलाई श्रेष्ठ जागरुक याजकहरू यज्ञवेदीमा प्रतिष्ठित गर्दछन्।

तनूत्यजेव तस्करा वनर्गू रशनाभिर्दशभिरभ्यधीताम्।
इयं ते अग्ने नव्यसी मनीषा युक्ष्वा रथं न शुचयद्भिरङ्गैः ॥६॥

वनमा विचरण गर्ने दुई तस्करले दस वटा डोरीले बाँधेका छन्। हे अग्निदेव ! रथझैं बनेर तिम्रा नवीन स्तुतिले तिम्रो तेज धारण गर्दछ।

ब्रह्म च ते जातवेदो नमश्चेयं च गीः सदमिद्वर्धनी भूत्।
रक्षाणो अग्ने तनयानि तोका रक्षोत नस्तन्वोऽ अप्रयुच्छन् ॥७॥

हे सम्पूर्ण ज्ञानले सम्पन्न अग्निदेव ! हामीले तिम्रो स्तुति गाएका छौं। तिम्रो वन्दना गर्नका लागि नै स्तोत्र समर्पित गरिएको छ, सधैंभरि तिम्रो महिमा बढाउन त्यो स्तोत्र सफल होस्। हे तेजस्वी अग्निदेव ! हामीलाई संरक्षण प्रदान गर र हाम्रा आफन्तलाई पनि पूर्ण संरक्षण प्रदान गर।

[सूक्त - ५]

ऋषि - त्रित आप्त्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

एकः समुद्रो धरुणो रयीणामस्मद्धृदो भूरिजन्मा वि चष्टे।
सिषक्त्यूधर्निण्योरुपस्थ उत्सस्य मध्ये निहितं पदं वेः ॥१॥

अद्वितीय अग्निदेव समुद्रजस्तै विशाल आधार भएका र सबै ऐश्वर्य धारणकर्ता हुन्। विविध रूपमा उत्पन्न हुने हाम्रा हार्दिक अभिलाषाका ज्ञाता उनै हुन्। उनी आकाश एवं पृथ्वीका बीचको अन्तरिक्षमा रहन्छन् र मेघमण्डलका बीचमा सञ्चरित छन्।

समानं नीडं वृषणो वसानाः सं जग्मिरे महिषा अर्वतीभिः।
ऋतस्य पदं कवयो नि पान्ति गुहा नामानि दधिरे पराणि ॥२॥

उस्तै थातमा बस्ने बलवान्हरू महान् र चञ्चल अश्व र लप्का भएका अग्निले सम्पन्न हुन्छन्। दूरदर्शी कविले हृदयरूपी गुफामा अग्निका अन्य प्रचलित नाम धारण गर्दछन् र उनले यज्ञका अनुशासनको रक्षा गर्दछन्।

ऋतायिनी मायिनी सं दधाते मित्वा शिशुं जज्ञतुर्वर्धयन्ती।
विश्वस्य नाभिं चरतो ध्रुवस्य कवेश्चित्तन्तुं मनसा वियन्तः ॥३॥

अन्न, तेज, सत्य र ऐश्वर्यले सम्पन्न द्यावापृथिवले अग्नि धारण गर्दछन्। शिशुको रूपमा रहेका अग्निलाई उनीहरू मातापिताझैं समय अनुसारले उत्पन्न गर्दछन्। समस्त जडचेतन संसारले केन्द्ररूपी ज्ञानवान् अग्निदेवको गुणगान गर्दै हव्य प्रदान गर्दछ।

ऋतस्य हि वर्तनयः सुजातमिषो वाजाय प्रदिवः सचन्ते।
अधीवासं रोदसी वावसाने घृतैरन्नैर्वावृधाते मधूनाम् ॥४॥

यज्ञआदि कर्म गर्दै ऐश्वर्यको अभिलाषा गर्ने यजमानहरू बल प्राप्तिका लागि राम्ररी प्रदीप्त अग्निलाई अर्चना गर्दछन्। पृथ्वी र द्युलोकले अग्नि, विद्युत् र सूर्यका रूपमा तीनै लोकमा विराजमान् अग्निदेवलाई मह, घिउ, जल र अन्नले बढाएका छन्।

सप्त स्वसृररुषीर्वावशानो विद्वान्मध्व उज्जभारा दृशे कम्।
अन्तर्येमे अन्तरिक्षे पुराजा इच्छन्वव्रिमविदत्पूषणस्य ॥५॥

विद्वान्हरूले अग्निदेवलाई उज्यालो, रमणयोग्य सात दिदीबहिनीजस्तै सुखदायी हुने र हेर्नमा रमाइलो रूपमा सबै पदार्थ देख्नका लागि प्रकट गरे। यी सातरङ्गी एवं उहिल्यै उत्पन्न भएका अग्निदेव द्युलोक र पृथ्वीका माझमा स्थापित भए। यजमानको कामना पूरा गर्ने प्रखर अग्निदेवले पृथ्वीलाई पोषक रस प्रदान गरे।

सप्त मर्यादाः कवयस्ततक्षुस्तासामेकामिदभ्यंहुरो गात्।
आयोर्ह स्कम्भ उपमस्य नीडे पथां विसर्गे धरुणेषु तस्थौ ॥६॥

नीतिकुशलहरूले मानिसका लागि सात किसिमिको मर्यादा निर्धारण गरे। तिनमा कुनै एउटा मात्रै उल्लङ्घन गरे पनि मानिस पापी कहलाउँछ। पापरूपी दुष्कर्मबाट मानिसलाई जोगाउने अग्निदेव नै हुन्। उनै अग्निदेव मानिसका नजिकै यज्ञवेदीमा सूर्यका रश्मिसित विचरण मार्ग र जलका बीचमा तीनै लोकमा विराजमान हुन्छन्।

असच्च सच्च परमे व्योमन् दक्षस्य जन्मन्नदितेरुपस्थे।
अग्निर्ह नः प्रथमजा ऋतस्य पूर्व आयुनि वृषभश्च धेनुः ॥७॥

असत् र सत् दुवै रूपमा यिनी व्याप्त रहेका छन्। यस्ता कार्यदक्षको जन्म अदितिका काखमा भएको हो। यिनी निश्चित् रूपले हामी र हाम्रो यज्ञभन्दा पहिले नै जन्मिएका हुन्। पहिलो सृष्टिमा यिनी वृषभ र धेनुभित्र रहेका थिए।

[सूक्त - ६]

**ऋषि** - त्रित आप्त्य। **देवता** - अग्नि। **छन्द** - त्रिष्टुप्।

अयं स यस्य शर्मन्नवोभिरग्नेरेधते जरिताभिष्टौ।
ज्येष्ठेभिर्यो भानुभिर्ऋषूणां पर्येति परिवीतो विभावा ॥१॥

जसका संरक्षण शक्तिले स्तुतिकर्ताहरू अभिष्ट फल प्राप्त गरेर आफ्नो सुखसौभाग्य बढाउँछन्, यी उनै अग्निदेव हुन्। अग्निदेव श्रेष्ठ सूर्यकिरणका रूपमा दीप्तिमान् तेजद्वारा चारैतिर प्रकाशित भएर सर्वत्र विचरण गर्दछन्।

यो भानुभिर्विभावा विभात्यग्निर्देवेभिर्ऋतावाजस्रः।
आ यो विवाय सख्या सखिभ्योऽपरिह्वृतो अत्यो न सप्तिः ॥२॥

असत्य र नित्य शाश्वत अग्निदेव, देवताको तेज प्रकट गर्दछन्। गतिशील अश्वजस्ता सखारूपी कल्याणकारी कार्य सम्पन्न गर्नका लागि निरन्तर यजमानका निकट पुग्छन्।

ईशे यो विश्वस्या देववीतेरीशे विश्वायुरुषसो व्युष्टौ।
आ यस्मिन्मना हवींष्यग्नावरिष्टरथः स्कभ्नाति शूषैः ॥३॥

सर्वत्र गतिशील अग्निदेव सम्पूर्ण विश्वमा यज्ञीय कर्मका अधिपति हुन्। सबैको प्राणरूप बनेर उषा कालमा सक्रिय रहने स्वामी उनै हुन्। साधकहरू मानसिक भावनाअनुसार अग्निदेवलाई हविष्यान्न समर्पित गर्दछन्। उनका कल्याणकारी यज्ञरूपी रथले नै अनिष्टकारी शक्तिको कुप्रभाव रोकेर विश्वको व्यवस्था सञ्चालन गर्ने माध्यमको काम गरेको छ।

शूषेभिर्वृधो जुषाणो अर्कैर्देवाँ अच्छा रघुपत्वा जिगाति।
मन्द्रो होता स जुह्वा३ यजिष्ठः सम्मिश्लो अग्निरा जिघर्ति देवान् ॥४॥

अनेकौं शक्तिले संवर्द्धित, स्तोत्रले स्तुति गरिने अग्निदेव आफ्ना शीघ्रगामी रथले देवताका समीप पुग्दछन्। स्तुत्य, देवताका वाहक, वाणीले यजन गर्न योग्य अग्निदेव देवताबाट नियुक्त हुन्। उनी सबैका सहयोगी बनेर देवताहरूका निम्ति हविष्यान्न समर्पित गर्दछन्।

तमुस्रामिन्द्रं न रेजमानमग्निं गीर्भिर्नमोभिरा कृणुध्वम्।
आ यं विप्रासो मतिभिर्गृणन्ति जातवेदसं जुह्वं सहानाम् ॥५॥

हे ऋत्विक्हरू हो ! महान् ऐश्वर्य र विभिन्न साधन प्रदान गर्ने देदीप्यमान अग्निलाई इन्द्रदेवको जस्तै प्रार्थना गरेर आहुतिले आफूसमक्ष प्रकट गर। मेधावीहरू शत्रु पराजित गर्ने देवताको आह्वान गर्न सर्वज्ञ अग्निदेवलाई आदरपूर्वक स्तुति गर्दछन्।

स यस्मिन्विश्वा वसूनि जग्मुर्वाजे नाश्वाः सप्तीवन्त एवैः।
अस्मे ऊतीरिन्द्रवाततमा अर्वाचीना अग्न आ कृणुष्व ॥६॥

हे अग्निदेव ! लडाईका मैदानमा तीव्र गति भएका अश्व एकत्र भएझैं संसारका समस्त सम्पदा तिम्रा अधीनस्थ भएर तिमीतिर एकत्र हुन आउँछन्। हे अग्निदेव ! हाम्रा लागि पराक्रमी इन्द्रदेवबाट उपलब्ध संरक्षण साधन प्रदान गर।

अधा ह्यग्ने मह्ना निषद्या सद्यो जज्ञानो हव्यो बभूथ।
तं ते देवासो अनु केतमायन्नधावर्धन्त प्रथमास ऊमाः ॥७॥

हे अग्निदेव ! तिमी उत्पन्न हुनासाथ महिमायुक्त भएर शीघ्रतापूर्वक प्रज्वलित हुन्छौ र यज्ञस्थलमा आहुति सेवन गर्दछौ। त्यसैले सबै देवता तिमीलाई देख्नासाथ पछ्याउन लाग्दछन्। श्रेष्ठ व्यक्तिहरू तिमीबाट संरक्षित भएर उन्नतिको चुलीमा पुग्दछन्।

[सूक्त - ७]

ऋषि - त्रित आप्त्य। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

स्वस्ति नो दिवो अग्ने पृथिव्या विश्वायुर्धेहि यजथाय देव।
सचेमहि तव दस्म प्रकेतैरुरुष्या ण उरुभिर्देव शंसैः ॥१॥

हे दिव्य गुणले सम्पन्न अग्निदेव ! दिव्यलोक र पृथ्वीबाट तिमी हाम्रो यज्ञका लागि सम्पूर्ण कल्याणकारी अन्न प्रदान गर। हामी तिम्रा निम्ति यज्ञीय भावले साधन अर्पित गरौं। हे अद्वितीय अग्निदेव ! तिमी आफ्ना विशिष्ट ज्ञानसम्पदा र संरक्षण सामर्थ्यले हाम्रो संरक्षण गर्दछौ।

इमा अग्ने मतयस्तुभ्यं जाता गोभिरश्वैरभि गृणन्ति राधः।
यदा ते मर्तो अनु भोगमानड्वसो दधानो मतिभिः सुजात ॥२॥

हे अग्निदेव ! यो स्तोत्र तिम्रै लागि उच्चरित छ। हाम्रा लागि गाई र अश्वले युक्त धन तिमीले प्रदान गरेका छौ, त्यसबाट पनि तिम्रै महिमा बढेको छ। तिमी मानिसलाई उपभोग्य धनसम्पदा प्रदान गर्दछौ। हे श्रेष्ठ गुणले सम्पन्न ऐश्वर्यदाता ! हामी तिमीलाई प्रार्थना अर्पित गर्दछौं।

अग्निं मन्ये पितरमग्निमापिमग्निं भ्रातरं सदमित्सखायम्।
अग्नेरनीकं बृहतः सपर्यं दिवि शुक्रं यजतं सूर्यस्य ॥३॥

हामी अग्निदेवलाई नै संरक्षण प्रदान गर्ने पिता, सहायक बन्धु र सधैं आफ्नो हितैषि मित्रका रूपमा स्वीकार गर्दछौं। हामी महिमायुक्त अग्निदेवलाई यज्ञस्थलमा उसै किसिमले अर्चना गर्दछौं, जसरी मानिसहरू दिव्यलोकमा रहेका पूजनीय, प्रकाशमान सूर्यमण्डलको उपासना गर्दछन्।

सिध्रा अग्ने धियो अस्मे सनुत्रीर्यं त्रायसे दम आ नित्यहोता।
ऋतावा स रोहिदश्वः पुरुक्षुर्द्युभिरस्मा अहभिर्वाममस्तु ॥४॥

हे अग्निदेव ! हाम्रो बुद्धि अभीष्ट फल प्राप्त गर्नका लागि सहायक सिद्ध होस्। होताका रूपमा तिमी जसलाई आफ्ना नियन्त्रण एवं संरक्षणमा राख्दछौ, त्यस्ता हामी तिम्रा नजिकै रहेर यज्ञमय जीवन बाँचौं। हामी अश्व आदिले युक्त धन र प्रचुर सम्पदाका स्वामी बनौं। हामीलाई ऐश्वर्यशाली समयमा हविष्यान्न समर्पित गर्ने अवसर प्राप्त होस्।

द्युभिर्हितं मित्रमिव प्रयोगं प्रत्नमृत्विजमध्वरस्य जारम्।
बाहुभ्यामग्निमायवोऽजनन्त विक्षु होतारं न्यसादयन्त ॥५॥

तेजोमय, मित्रतुल्य, पुरातन, ऋत्विक्जस्ता, हिंसारहित, यज्ञसम्पन्न गराउने, अग्निलाई याज्ञिकहरूले आफ्ना हातले उत्पन्न गरे। मानिसले देवता आह्वान गर्न र यज्ञका निमित्त अग्निलाई प्रजाको माझमा प्रतिष्ठित गरे।

स्वयं यजस्व दिवि देव देवान्किं ते पाकः कृणवदप्रचेताः।
यथायज ऋतुभिर्देव देवानेवा यजस्व तन्वं सुजात ॥६॥

हे तेजसम्पन्न अग्निदेव ! तिमी दिव्यलोकमा स्थित देवताका लागि स्वयं यजन गर। मन्द बुद्धि र अबोध मानिसले तिमीबिना केही गर्न सक्दैन। हे श्रेष्ठजन्मा अग्निदेव ! तिमीले बेलाबखत देवताहरूका निम्ति यजन गरेझैं यस बेला पनि गर।

भवा नो अग्नेऽवितोत गोपा भवा वयस्कृदुत नो वयोधाः।
रास्वा च नः सुमहो हव्यदातिं त्रास्वोत नस्तन्वो३ अप्रयुच्छन् ॥७॥

हे ज्ञानी अग्निदेव ! तिमी प्रत्यक्ष र परोक्ष रूपले सबै दुःखबाट हाम्रो रक्षा गर। हाम्रा लागि अन्न उत्पादनकर्ता र दाता बन। हे पूजनीय अग्निदेव ! हामीलाई यज्ञ गर्ने सामग्री प्रदान गर र हाम्रा शरीरलाई आलस्य आदिबाट बचाऊ।

[सूक्त - ८]

ऋषि - त्रिशिरा त्वाष्ट्र। देवता - अग्नि इन्द्र। छन्द - त्रिष्टुप्।

प्र केतुना बृहता यात्यग्निरा रोदसी वृषभो रोरवीति।
दिवश्चिदन्तॉं उपमॉं उदानडपामुपस्थे महिषो ववर्ध ॥१॥

अग्निदेव धुवाँरूपी विशाल पताकाले युक्त भएर द्युलोक र पृथ्वीमा व्याप्त छन्। उनी देवता आह्वान गर्ने वेलामा साँढे डुक्रिएझैं शब्द निकाल्छन्। उनी द्युलोकनजिकै व्याप्त रहन्छन् र जलको आश्रयस्थल अन्तरिक्षमा विद्युत्का रूपमा संवर्द्धित हुन्छन्।

मुमोद गर्भो वृषभः ककुद्मानस्रेमा वत्सः शिमीवाँ अरावीत्।
स देवतात्युद्यतानि कृण्वन्त्स्वेषु क्षयेषु प्रथमो जिगाति ॥२॥

महान् तेजस्वी र कामनावर्षक अग्निदेव आकाश र पृथिवीका बीचमा प्रसन्नतापूर्वक रहन्छन्। यी शब्दायमान अग्निदेव रात्रि र उषाका गर्भबाट उत्पन्न भएर यज्ञीय सत्कर्म निर्वाह गर्दछन्। यिनी आह्वानका लागि योग्य स्थान उपलब्ध गराउँदै यज्ञका सर्वश्रेष्ठ स्थानमा प्रतिष्ठित हुन्छन्।

आ यो मूर्धानं पित्रोररब्ध न्यध्वरे दधिरे सूरो अर्णः।
अस्य पत्मन्नरुषीरश्वबुध्ना ऋतस्य योनौ तन्वो जुषन्त ॥३॥

आफ्ना मातापितारूपी पृथ्वी र द्युलोकका शीर्षमा तेज फैलाउने बलवान् अग्निको तेज यज्ञकर्ताले यज्ञमा प्रतिष्ठित गर्दछन्। अग्निदेव यज्ञस्थलमा व्याप्त, तेजसम्पन्न र हविष्यान्न सम्पन्न हुनाले मेधावीहरू उनको अर्चना गर्दछन्।

उषउषो हि वसो अग्रमेषि त्वं यमयोरभवो विभावा।
ऋताय सप्त दधिषे पदानि जनयन्मित्रं तन्वे३ स्वायै ॥४॥

हे प्रशंसनीय अग्निदेव ! तिमी उषाकालभन्दा पहिले नै यज्ञस्थलमा विराजमान हुन्छौ। तिमी दिवस र रात्रि दुवैलाई सुशोभित गराउँछौ। आफ्ना तेजले सूर्यदेवलाई उत्पन्न गरेर यज्ञका लागि सात खालका किरणरूपी दिव्यता धारण गर्दछौ।

भुवश्चक्षुर्मह ऋतस्य गोपा भुवो वरुणो यदृताय वेषि।
भुवो अपां नपाज्जातवेदो भुवो दूतो यस्य हव्यं जुजोषः ॥५॥

हे अग्निदेव ! तिमी महिमायुक्त यज्ञ अथवा सत्यका नेत्र प्रकाशित गर्दछौ। तिमी वरुण रूपमा यज्ञस्थलमा गएर संरक्षण गर्दछौ। हे सर्वज्ञ अग्निदेव ! तिमी नै जलका पौत्रका रूपमा उत्पन्न छौ। तिमी जुन याज्ञिकको हविष्य स्वीकार गर्दछौ, उसको सन्देशवाहक बनेर देवतासमक्ष पुर्‍याउँछौ।

भुवो यज्ञस्य रजसश्च नेता यत्रा नियुद्भिः सचसे शिवाभिः।
दिवि मूर्धानं दधिषे स्वर्षां जिह्वामग्ने चकृषे हव्यवाहम् ॥६॥

हे अग्निदेव ! तिमीले हविष्यान्न ग्रहण गर्ने आफ्नो जिव्रोरूपी ज्वाला प्रदीप्त गर्दा यज्ञ र फलश्रुतिका रूपमा रहेका पर्जन्यको प्रवर्तक मानिन्छौ। तिमी कल्याणस्वरूप अश्वसँग पुग्दा दिव्यलोकमा विराजमान आदित्यको शोभा धारण गर्दछौ।

अस्य त्रितः क्रतुना वव्रे अन्तरिच्छन्धीतिं पितुरेवैः परस्य।
सचस्यमानः पित्रोरुपस्थे जामि ब्रुवाण आयुधानि वेति ॥७॥

त्रित नामक ऋषिले जीवात्माका रूपमा परम पितारूपी परमात्मासित नै अन्तःकरणमा यज्ञको कामना गर्छन्। पिताका काखमा रहेर स्तुति गर्दै आयुध प्राप्त गर्दछन्।

स पित्र्याण्यायुधानि विद्वानिन्द्रेषित आप्त्यो अभ्ययुध्यत्।
त्रिशीर्षाणं सप्तरश्मिं जघन्वान्त्वाष्ट्रस्य चित्निः ससृजे त्रितो गाः ॥८॥

पिताबाट आयुध प्राप्त गरेर ती आप्तका पुत्र विद्वान् त्रित ऋषिका रूपमा रहेका सनातन चेतनायुक्त जीवात्माले बलियो सङ्ग्राम गरे। तीन टाउका र सात बन्धनयुक्त त्वष्टाका पुत्र पुत्ररूपी अभिमानलाई वध गरेर ती मित्रले त्यहाँका गाई फुक्का गराए।

**भूरीदिन्द्र उदिनक्षन्तमोजोऽवाभिनत् सत्पतिर्मन्यमानम्।**
**त्वाष्ट्रस्य चिद्विश्वरूपस्य गोनामाचक्राणस्त्रीणि शीर्षा परा वर्क् ॥९॥**

सत्का अधिपति इन्द्रदेवले त्वष्टाका अति बलशाली र अभिमानी पुत्र विश्वरूपलाई विदीर्ण गरे। उनका गाई आफूतिर बोलाउँदै त्यसका तीन वटै शिर छेदन गरे।

[सूक्त - ९]

**ऋषि** - त्रिशिरा त्वाष्ट्र। **देवता** - आपो देवता। **छन्द** - गायत्री अनुष्टुप्।

**आपो हि ष्ठा मयोभुवस्ता न ऊर्जे दधातन। महे रणाय चक्षसे ॥१॥**

हे जलदेवता ! तिमी सुखका मूल स्रोत हौ। हामीलाई पराक्रमले युक्त उत्तम कर्म गर्नका लागि पोषक रस प्रदान गर।

**यो वः शिवतमो रसस्तस्य भाजयतेह नः। उशतीरिव मातरः ॥२॥**

हे जलदेवता ! हामीलाई अत्यन्त सुखकर पोषक रस सेवन गर्न देऊ। माताले आफ्ना दुधले बच्चालाई पोषण दिएझैं हामीलाई तिमी पोषित गर।

**तस्मा अरङ्गमाम वो यस्य क्षयाय जिन्वथ। आपो जनयथा च नः ॥३॥**

हे जलदेव ! तिम्रो कल्याणकारी रस हामीलाई शीघ्र उपलब्ध होस्। त्यसैबाट तिमी सम्पूर्ण विश्वलाई तृप्त गर्दछौ। हाम्रा वंश पोषित गरेर तिमी अघि बढाइदेऊ।

**शं नो देवीरभिष्टय आपो भवन्तु पीतये। शं योरभि स्रवन्तु नः ॥४॥**

हामीलाई सुखशान्ति प्रदान गर्ने जलप्रवाह प्रकट होस्। त्यो जल पिउने योग्य, कल्याणकारी र सुखकर होस्। शिरमाथि बर्सिने रोग हामीदेखि टाढा लगिदेओस्।

**ईशाना वार्याणां क्षयन्तीश्चर्षणीनाम्। अपो याचामि भेषजम् ॥५॥**

जल प्रवाह मानिसको इच्छित पदार्थको स्वामी र सम्पूर्ण प्राणीको आश्रयदाता हो। हामी जलबाट औषधिमा जीवनरसको कामना गर्दछौं।

**अप्सु मे सोमो अब्रवीदन्तर्विश्वानि भेषजा। अग्निं च विश्वशम्भुवम् ॥६॥**

जलतत्त्वमा सम्पूर्ण जीवनरस र संसारका लागि सुखदायक अग्नितत्त्व पनि रहेको छ भन्ने कुराको सोमदेवले सङ्केत गरेका छन्।

**आपः पृणीत भेषजं वरूथं तन्वे३ मम। ज्योक्च सूर्यं दृशे ॥७॥**

हे जलदेवता ! हाम्रा शरीरका लागि संरक्षक औषधि प्रदान गर। त्यसबाट आरोग्य लाभ गरेर हामी चिरकालसम्म सूर्यदर्शन गर्दै कृतार्थ होऔं र दीर्घायु प्राप्त गरौं।

**इदमापः प्र वहत यत्किं च दुरितं मयि। यद्वाहमभिदुद्रोह यद्वा शेप उतानृतम् ॥**

हामीभित्र कसैप्रति पनि द्वेषभाव, आक्रोशवश हत्याहिंसा, असत्य वाणी आदिको प्रयोग गर्ने विकृति रहेको छ भने हे जलदेवता ! तिनलाई पूरै समाप्त गरेर हामीलाई शुद्ध र पवित्र बनाऊ।

**आपो अद्यान्वचारिषं रसेन समगस्महि।**
**पयस्वानग्न आ गहि तं मा सं सृज वर्चसा ॥९॥**

आज जलको आश्रय प्राप्त गरेर त्यसका रसबाट हामी लाभान्वित भएका छौं। हे जलमा विद्यमान अग्निदेव ! नजिकै आएर हामीलाई आफ्ना तेजले परिपुष्ट गर।

[सूक्त - १०]

**ऋषि** - यमी यम। **देवता** - यम यमी। **छन्द** - त्रिष्टुप्।

**ओ चित्सखायं सख्या ववृत्यां तिरः पुरू चिदर्णवं जगन्वान्।**
**पितुर्नपातमा दधीत वेधा अधि क्षमि प्रतरं दीध्यानः ॥१॥**

हे यमदेव ! विशाल आकाशको एकान्तमा सख्य अथवा मित्रभावले तिमीलाई म भेट्न चाहन्छु। नौकाजस्तो भएर संसाररूपी समुद्र तर्नका लागि पिताका नातिका रूपमा हाम्रा असल सन्तान उत्पन्न गराउन हामी परस्पर सङ्गत होऔं भन्ने विधाताको इच्छा छ।

**न ते सखा सख्यं वष्ट्येतत्सलक्ष्मा यद्विषुरूपा भवाति।**
**महस्पुत्रासो असुरस्य वीरा दिवो धर्तार उर्विया परि ख्यन् ॥२॥**

हे यमी ! तिम्रो सहयोगी यम तिमीसितको यस्तो सम्पर्कको कामनाले रहित छ, किनभने तिमी मेरी

साख्खै बहिनी हौ। हाम्रा लागि यो उचित होइन। असुरका अनेकौं वीर पुत्र दिव्यलोक धारण गर्दै सर्वत्र विचरण गर्दछन्।

**उशन्ति घा ते अमृतास एतदेकस्य चित्त्यजसं मर्त्यस्य।**
**नि ते मनो मनसि धाय्यस्मे जन्युः पतिस्तन्व१मा विविश्याः ॥३॥**

हे यम ! यद्यपि मानिसमा यस्तो संयोग त्याज्य छ तापनि देवशक्तिलाई यस किसिमको संसर्गको रहर हुन्छ। मेरो इच्छा तिमी पनि अनुकरण गर। पतिका रूपमा तिमी नै मेरा लागि उपयुक्त छौ।

**न यत्पुरा चकृमा कद्ध नूनमृता वदन्तो अनृतं रपेम।**
**गन्धर्वो अप्स्वप्या च योषा सा नो नाभिः परमं जामि तन्नौ ॥४॥**

हे यमी ! हामीले पहिले यस किसिमका कृत्य गरेनौं। हामी सत्यवादी हौं। असत्य वचन हामी बोल्दैनौं। जलबाट नै गन्धर्व र जलबाट नै योषाको उत्पत्ति भएको हो। ती दुवै हाम्रा उत्पादक हुन्। हाम्रो विशिष्ट सम्बन्ध छ।

**गर्भे नु नौ जनिता दम्पती कर्देवस्त्वष्टा सविता विश्वरूपः।**
**नकिरस्य प्र मिनन्ति व्रतानि वेद नावस्य पृथिवीउत द्यौः ॥५॥**

हे यम ! सर्वप्रेरक र सर्वव्यापी उत्पादन कर्ता त्वष्टादेवले हामीलाई गर्भमा नै दम्पतीका रूपमा सम्बद्ध गरेका छन्। उनै प्रजापालक परमेश्वरको इच्छा रोक्नका लागि कोही पनि सक्षम छैन। हाम्रा यो सम्बन्ध पृथ्वी र द्युलोकले पनि जानेका छन्।

**को अस्य वेद प्रथमस्याह्नः क ईं ददर्श क इह प्र वोचत्।**
**बृहन्मित्रस्य वरुणस्य धाम कदु ब्रव आहनो वीच्या नॄन् ॥६॥**

हे यम ! ती पहिलेका कुरा कसले जानेको छ र ? कसले त्यो देखेको छ र ? यसलाई पारस्परिक सम्बन्ध कसले भन्न सक्छ र ? मित्र र वरुणदेवका यस महान् धामबाट तिमी पतन हुने कुरो किन गर्दछौ ?

**यमस्य मा यम्यं१ काम आगन्त्समाने योनौ सहशेय्याय।**
**जायेव पत्ये तन्वं रिरिच्यां वि चिद्वृहेव रथ्येव चक्रा ॥७॥**

पत्नीप्रति पतिको समर्पणजस्तै तिमीप्रति म आफैंलाई अर्पित गर्दछु। एकै ठाउँमा सँगसँगै बसेर कर्म गर्ने कामना मलाई प्राप्त भएको छ। हामी एकै रथका दुई पाङ्ग्रा भएर समान कार्यमा प्रेरित होऔं।

**न तिष्ठन्ति न नि मिषन्त्येते देवानां स्पश इह ये चरन्ति।**
**अन्येन मदाहनो याहि तूयं तेन वि वृह रथ्येव चक्रा ॥८॥**

यस लोकमा जो देवताका पार्षद छन्, उनीहरू रातदिन विचरण गर्दछन्। उनीहरू कहिल्यै रोकिँदैनन्। उनीहरूका दृष्टिबाट कुनै कुरो लुकाउन सकिँदैन। हे अवगाल पार्ने ! यस्तो भावना मेरा छेउबाट हटाऊ र कुनै अर्कैलाई पतिका रूपमा वरण गर।

**रात्रीभिरस्मा अहभिर्दशस्येत्सूर्यस्य चक्षुर्मुहुरुन्मिमीयात्।**
**दिवा पृथिव्या मिथुना सबन्धू यमीर्यमस्य बिभृयादजामि ॥९॥**

हे यम ! रात्रि र दिवस दुवैले हाम्रो कामना पूरा गरुन्। सूर्यका तेजले यमका लागि तेज प्रदान गरोस्। द्युलोक र पृथ्वीजस्तै हाम्रो सम्बन्ध अभिन्न साथीको छ, त्यसैले यमीले यमको साहचर्य प्राप्त गरुन्, यसमा कुनै दोष छैन।

**आ घा ता गच्छानुत्तरा युगानि यत्र जामयः कृणवन्नजामि।**
**उप बर्बृहि वृषभाय बाहुमन्यमिच्छस्व सुभगे पतिं मत् ॥१०॥**

यस्तो समय भविष्यमा आउन सक्ला, त्यति बेला दिदीबहिनी र दाजुभाइको भाव हराएर पतिका रूपमा स्वीकार गर्लान्, तर हे सौभाग्यवती ! मसित तिमीले पतिका सम्बन्धको आशा नगर। तिमी अर्कै कुनैसित सन्तान उत्पादन गर्ने इच्छा गर।

**किं भ्रातासद्यदनाथं भवाति किमु स्वसा यन्निर्ऋतिर्निगच्छात्।**
**काममूता बह्वे३तद्रपामि तन्वा मे तन्वं१ सं पिपृग्धि ॥११॥**

हे यम ! जो हुँदाहुँदै दिदीबहिनीले अनाथ हुनुपर्दछ भने त्यो कस्तो दाजुभाइ हो ? जो लाचारजस्ती भएर भाग्नुपर्दछ भने त्यो कस्ती दिदीबहिनी हो ? कामभावले प्रेरित भएर मैले धेरै कुरा गरिरहेकी छु, त्यसैले आपसमा जिउ जोडौं।

न वा उ ते तन्वा तन्वं१ सं पपृच्यां पापमाहुर्यः स्वसारं निगच्छात्।
अन्येन मत्प्रमुदः कल्पयस्व न ते भ्राता सुभगे वष्ट्येतत् ॥१२॥

हे यमी ! म शारीरिक सम्बन्धका लागि इच्छा गर्दिनँ, यो यथार्थ हो, किनभने दाजुभाइ र दिदीबहिनीको सम्बन्ध पवित्र हुन्छ। तिमी मेरो आशा त्यागेर अर्कै पुरुषसित खुसी मन गराऊ। हे सुभगे ! दाजुभाइ हुनाले तिम्रो निवेदन ममा कहिल्यै स्वीकार्य हुनेछैन।

बतो बतासि यम नैव ते मनो हृदयं चाविदाम।
अन्या किल त्वां कक्ष्येव युक्तं परि ष्वजाते लिबुजेव वृक्षम् ॥१३॥

हे यम ! तिमी त ज्यादै दुर्बल रहेछौ। तिम्रो मन र हृदयको भावना बुझ्नमा मैले गल्ती गरेँ तर डोरीले घोडा बाँधेझैं वा लहराले रुख बेरेझैं कुन अर्की स्त्रीले मजस्तो तिमीलाई अँगाल्न सक्छे ?

अन्यमू षु त्वं यम्यन्य उ त्वां परि ष्वजाते लिबुजेव वृक्षम्।
तस्य वा त्वं मन इच्छा स वा तवाधा कृणुष्व संविदं सुभद्राम् ॥१४॥

हे यमी ! तिमीसित जब यस कुराको जानकारी छ भनेदेखि तिमी पनि अर्कै पुरुषलाई रुखलाई लहराले बेरेझैं आश्रय लिएर पतिका रूपमा स्वीकार गर। आपसमा एकले अर्कालाई मन परेको व्यवहार गर र त्यसैबाट मङ्गलकारी सुख प्राप्त गर।

[सूक्त - ११]

**ऋषि** - हविर्धान आङ्गि। **देवता** - अग्नि। **छन्द** - जगती त्रिष्टुप्।

वृषा वृष्णे दुदुहे दोहसा दिवः पयांसि यह्वो अदितेरदाभ्यः।
विश्वं स वेद वरुणो यथा धिया स यज्ञियो यजतु यज्ञियाँ ऋतून् ॥१॥

वर्षणशील, महिमायुक्त र अदम्य अग्निदेवले अन्तरिक्षीय मेघ दोहन गरेर यज्ञसम्पादक यजमानका लागि जलको वर्षा गरे। जसरी वरुणदेव अन्तर्ज्ञानसम्पन्न भएर सम्पूर्ण संसार जान्दछन्, उसै गरी अग्निदेव पनि सम्पूर्ण संसारका ज्ञाता हुन्। यज्ञमा प्रयुक्त अग्निदेवलाई ऋचाअनुरूपको अर्चना गरौं।

रपद्गन्धर्वीरप्या च योषणा नदस्य नादे परि पातु मे मनः।
इष्टस्य मध्ये अदितिर्नि धातु नो भ्राता नो ज्येष्ठः प्रथमो वि वोचति ॥२॥

अग्निदेवको महिमा गान गर्ने गन्धर्वपत्नीजस्तै वाणी र जलद्वारा शुद्ध भएका हविले अग्निदेवलाई सन्तुष्ट गरे। एकाग्रतापूर्वक स्तोत्र गान गर्ने साधकलाई अखण्ड अग्निदेव यज्ञीय सत्कर्मतर्फ प्रेरित गरुन्। यजमानमा प्रमुख हाम्रा ज्येष्ठ भ्राताजस्ता यज्ञका सञ्चालक उनै अग्निदेवलाई प्रार्थना गर्दछौं।

सो चित्नु भद्रा क्षुमती यशस्वत्युषा उवास मनवे स्वर्वती।
यदीमुशन्तमुशतामनु क्रतुमग्निं होतारं विदथाय जीजनन् ॥३॥

जति बेला यज्ञकार्य गर्न इच्छुक र त्यसको व्यवस्था जुटाउने याजकहरू अग्निदेवको प्रार्थना गर्दै अग्निलाई यज्ञका लागि प्रज्वलित गर्दछन्, त्यसै अवसरमा कामना पूर्ण गराउने, श्रेष्ठ शब्दयुक्त कीर्तिमती, सुविख्यात उषादेवी मानिसको कल्याणका लागि सूर्योदयभन्दा पहिले नै उदाउँछिन्।

अध त्यं द्रप्सं विभ्वं विचक्षणं विराभरदिषितः श्येनो अध्वरे।
यदी विशो वृणते दस्ममार्या अग्निं होतारमध धीरजायत ॥४॥

यो उषारूपी दिव्य आवरणका पछिपछि यज्ञबाट प्रेरित श्येनरूपी सूर्यद्वारा बलशाली, महिमामय, दर्शनीय सोमलाई उचित मात्रामा ल्याइयो। जुन बेला श्रेष्ठजनहरू सम्मुख जान योग्य, दर्शनीय र देवतालाई आह्वान गर्ने यी अग्निदेवको स्तुति गर्दछन्, उसै यज्ञ गर्ने समयमा बुद्धि धारण गर्ने क्षमता उत्पन्न हुन्छ।

सदासि रण्वो यवसेव पुष्यते होत्राभिरग्ने मनुषः स्वध्वरः।
विप्रस्य वा यच्छशमान उक्थ्यं१ वाजं ससवाँ उपयासि भूरिभिः ॥५॥

हे अग्निदेव ! पशुका लागि घाँस आदि आहार विशेष रुचिकर भएझैं तिमी सधैं रमणीय एवं असल यज्ञद्वारा मानिसका लागि कल्याणप्रद होऊ। स्तोताका स्तुतिगानले प्रशंसित भएर तिमी हविष्यान्न ग्रहण गर्दै विभिन्न देवशक्तिसँगै हाम्रो यज्ञ सफल गर।

उदीरय पितरा जार आ भगमियक्षति हर्यतो हृत्त इष्यति।
विवक्ति वह्निः स्वपस्यते मखस्तविष्यते असुरो वेपते मती ॥६॥

हे अग्निदेव ! रात्रिरूपी अन्धकार विनाश गर्ने सूर्यदेव आफ्ना प्रकाशरूपी तेजले सर्वत्र फैलिएझैँ तिमी आफ्नो ज्वालारूपी तेज मातापितारूपी पृथ्वी र आकाशमा विस्तृत गराऊ। सन्मार्गका अनुयायी यजमानहरू दैवी गुण संवर्द्धन गर्नका लागि अन्त:करणबाट यज्ञरूपी सत्कर्म गर्न इच्छुक हुन्छन्। अग्निदेव स्तोत्र संवर्द्धित गर्दछन्। ऋह्मा यज्ञरूपी कर्म राम्ररी सञ्चालित गर्ने उत्सुकताले स्तोत्र बढाउँछन् र यज्ञकर्ममा त्रुटि नरहोस् भनेर सधैँभरि जागरुक रहन्छन्।

यस्ते अग्ने सुमतिं मर्तो अक्षत्सहसः सूनो अति स प्र शृण्वे।
इषं दधानो वहमानो अश्वैरा स द्युमाँ अमवान्भूषति द्यून् ॥७॥

हे बलबाट उत्पन्न अग्निदेव ! जुन मानिसले तिम्रो कृपादृष्टि प्राप्त गर्दछन्, उनीहरू विशेष ख्याति प्राप्त हुन्छन्। अन्न आदिले सम्पन्न, अश्व आदिले युक्त, तेजसम्पन्न र शक्तिशाली भएर ती मानिस दीर्घजीवन र सुखसौभाग्य प्राप्त गर्दछन्।

यदग्न एषा समितिर्भवाति देवी देवेषु यजता यजत्र।
रत्ना च यद्विभजासि स्वधावो भागं नो अत्र वसुमन्तं वीतात् ॥८॥

हे स्वधायुक्त यज्ञीय अग्निदेव ! जुन अवसरमा हामी यजनीय देवतालाई प्रार्थनाले सम्पन्न गराउँछौँ र तिमीबाट विभिन्न किसिमका रत्न आदि द्रव्य यजमानमा वितरण गरिन्छन्, त्यस बेला हामीलाई पनि तिमी धनको भाग प्रदान गर।

श्रुधी नो अग्ने सदने सधस्थे युक्ष्वा रथममृतस्य द्रवित्नुम्।
आ नो वह रोदसी देवपुत्रे माकिर्देवानामप भूरिह स्याः ॥९॥

हे अग्निदेव ! सम्पूर्ण देवताले सम्पन्न यज्ञस्थलमा रहँदै हामीद्वारा गरिएको प्रार्थनाको अभिप्राय बुझिदेऊ। तिमी आफ्नो अमृत वर्षा गराउने रथ तयार पार। देवतशक्तिका मातापितारूपी द्यावापृथिवीलाई हाम्रा यज्ञमा लिएर आऊ। कुनै देवता हाम्रा यज्ञका कर्मसित असन्तुष्ट नहोऊन् भनेर तिमी यहीँ बस। देवतालाई गरिने आतिथ्यबाट अलग नहोऊ।

[सूक्त - १२]

ऋषि - हविर्धान आङ्गि। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

द्यावा ह क्षामा प्रथमे ऋतेनाभिश्रावे भवतः सत्यवाचा।
देवो यन्मर्तान्यजथाय कृण्वन्त्सीदद्धोता प्रत्यङ् स्वमसुं यन् ॥१॥

द्युलोक र पृथिवीले सत्य वचनले यज्ञीय अवसरमा सबैभन्दा पहिले नियमानुसार अग्निदेवलाई आह्वान गरुन्। त्यसपछि तेजसम्पन्न अग्निदेवले यज्ञीय कर्मका लागि मानिसलाई प्रेरित गरुन्। उनी आफ्ना प्रज्वलित ज्योतिद्वारा यज्ञमा प्रतिष्ठित भएर देवतालाई आह्वान गर्नका लागि उद्यत होऊन्।

देवो देवान्परिभूर्ऋतेन वहा नो हव्यं प्रथमश्चिकित्वान्।
धूमकेतुः समिधा भाऋजीको मन्द्रो होता नित्यो वाचा यजीयान् ॥२॥

दिव्य गुणले सम्पन्न देवताको सत्यका प्रमुख ज्ञाता, सर्वोत्तम अग्निदेव हामीबाट प्रदान गरिएको हविष्यान्न देवताकहाँ पुऱ्याउन्। धुवाँरूपी ध्वजा भएका, माथितिर मात्रै जाने, कान्तिले उज्यालिएका, प्रशंसनीय, देवताको आह्वान गर्ने, नित्य अग्निदेवलाई अभिमन्त्रित आहुति समर्पित गरिन्छ।

स्वावृग्देवस्यामृतं यदी गोरतो जातासो धारयन्त उर्वी।
विश्वे देवा अनु तत्ते यजुर्गुर्दुहे यदेनी दिव्यं घृतं वाः ॥३॥

अग्निदेवद्वारा सुखप्रदाता जल उत्पन्न हुन्छ। जलबाट उत्पन्न औषधिको पालनपोषण द्यावापृथिवीले गर्छन्। हे अग्निदेव ! तिम्रा दीप्तिमान् ज्वालाले स्वर्गस्थ दिव्य पोषक रसका रूपमा जलको दोहन गर्दछ। उनको यो जल वर्षारूपी अनुदानका महिमाको सबै देवताले गान गर्दछन्।

अर्चामि वां वर्धायापो घृतस्नू द्यावाभूमी शृणुतं रोदसी मे।
अहा यद् द्यावोऽसुनीतिमयन्मध्वा नो अत्र पितरा शिशीताम् ॥४॥

हे अग्निदेव ! तिमी हाम्रो यज्ञीय कर्म उन्नत गराऊ। हे जलवर्षक द्यावापृथिवी ! हामी तिमीहरूको

स्तुति गर्दछौं। तिमीहरू यसको अभिप्राय बुझ। स्तोताहरू जुन यज्ञका अवसरमा तिमीहरूको प्रार्थना गर्दछन्, उसै बेला मातापिताका रूपमा रहेका पृथ्वी र द्युलोक यहाँ जल वर्षा गर्दै हाम्रा लागि विशेष सहायक होऊन्।

**किं स्विन्न राजा जगृहे कदस्याति व्रतं चकृमा को वि वेद।**
**मित्रश्चिद्धि ष्मा जुहुराणो देवाञ्छ्लोको न यातामपि वाजो अस्ति ॥५॥**

प्रज्वलित अग्निदेवले हाम्रो प्रार्थना र हविष्यान्न ग्रहण गर्लान् ? हामीबाट उनका नियम र व्रतको उचित निर्वाह होला ? यो जान्न सक्षम को होला ? असल मित्रलाई बोलाएझैं अग्निदेव हाम्रो आह्वानमा प्रकट हुन्छन्। हाम्रो प्रार्थना हविष्यान्न देवतातिर जाओस्।

**दुर्मन्त्वत्रामृतस्य नाम सलक्ष्मा यद्विषुरूपा भवाति।**
**यमस्य यो मनवते सुमन्त्वग्ने तमृष्व पाह्यप्रयुच्छन् ॥६॥**

यस भूमिमा अमृतमयी विभिन्न गुणले सम्पन्न र जल विभिन्न रूपमा व्याप्त रहेको छ। यसले यमदेवको अपराध क्षमा गर्दछ। हे महिमावान् तेजस्वी अग्निदेव ! तिमी त्यस जलको संरक्षण गर।

**यस्मिन्देवा विदथे मादयन्ते विवस्वतः सदने धारयन्ते।**
**सूर्ये ज्योतिरदधुर्मास्यक्तून्परि द्योतनिं चरतो अजस्रा ॥७॥**

यजमानका यज्ञवेदीमा प्रतिष्ठित देवताहरू अग्निदेवको निकटता प्राप्त गरेर हर्षित छन्। यिनीहरूले सूर्यमा तेजस्वी दिन र चन्द्रमामा रात्रि स्थापित गरे। यी सूर्य र चन्द्र दुवै निरन्तर तेजस्विता धारण गरिरहेका छन्।

**यस्मिन्देवा मन्मनि सञ्चरन्त्यपीच्येऽ न वयमस्य विद्म।**
**मित्रो नो अत्रादितिरनागान् त्सविता देवो वरुणाय वोचत् ॥८॥**

ज्ञानसम्पन्न अग्निदेवका उपस्थितिमा देवशक्ति आफ्नो कार्य निर्वाह गर्दछन्। हामी तिनीहरूको रहस्यमय स्वरूप जान्न असमर्थ छौं।

**श्रुधी नो अग्ने सदने सधस्थे युक्ष्वा रथममृतस्य द्रवित्नुम्।**
**आ नो वह रोदसी देवपुत्रे माकिर्देवानामप भूरिह स्याः ॥९॥**

हे अग्निदेव ! सम्पूर्ण देवताले सम्पन्न यज्ञस्थलमा रहँदै हामीले गरेका प्रार्थनाको तिमी अभिप्राय बुझिदेऊ। तिमी आफ्नो अमृत वर्षा गराउने रथ तयार पार। देवतशक्तिका मातापितारूपी द्यावापृथिवीलाई हाम्रा यज्ञमा लिएर आऊ। कुनै देवता हाम्रा यज्ञका कर्मसित असन्तुष्ट नहोऊन् भनेर यहीं बस। देवतालाई गरिने आतिथ्य छोडेर नजाऊ।

## [सूक्त - १३]

**ऋषि** - विवस्वान् आदित्य। **देवता** - हविर्धान। **छन्द** - त्रिष्टुप जगती।

**युजे वां ब्रह्म पूर्व्यं नमोभिर्वि श्लोक एतु पथ्येव सूरेः।**
**शृण्वन्तु विश्वे अमृतस्य पुत्रा आ ये धामानि दिव्यानि तस्थुः ॥१॥**

हे शकट हो ! तिमीहरू दुवैलाई हामी सोम आदि हविष्यान्नले अभिपूरित गरेर पत्नीशालाबाट हविर्धानतर्फ ल्याउँछौं र त्यसपछि यज्ञ सम्पन्न गर्दछौं। आहुतिझैं स्तोत्ररूपी वचन पनि देवतासमक्ष पुगून्। दिव्यलोकका उच्च स्थानमा प्रतिष्ठित अमरता प्राप्त देवताले हाम्रो स्तोत्र सुनून्।

**यमे इव यतमाने यदैतं प्र वां भरन्मानुषा देवयन्तः।**
**आ सीदतं स्वमु लोकं विदाने स्वासस्थे भवतमिन्दवे नः ॥२॥**

हे शकटदेव ! तिमीहरू आपसमा आबद्ध भएर उत्साहपूर्वक यज्ञस्थलमा उपस्थित हुँदा याजकहरू तिमीमाथि सोम आदि हविष्यान्न समर्पित गर्दछन्। तिमी आफ्नो ठाउँ यथेष्ट प्राप्त गर, त्यसले सोम पनि उत्तम स्थलमा पुगेर सुशोभित होस्।

**पञ्च पदानि रुपो अन्वरोहं चतुष्पदीमन्वेमि व्रतेन।**
**अक्षरेण प्रति मिम एतामृतस्य नाभावधि सं पुनामि ॥३॥**

हामी यज्ञका पाँचै उपकरण यथाक्रममा राख्दै चतुष्पदी, त्रिष्टुप् आदि छन्द नियमपूर्वक प्रयोग गर्दछौं। यज्ञस्थलका वेदीमा रहेको सोम पवित्र गराउँदै हामी परमात्माको ओं नाम उच्चारण गरेर आफ्ना यज्ञीय कर्म पूरा गर्दछौं।

देवेभ्यः कमवृणीत मृत्युं प्रजायै कममृतं नावृणीत।
बृहस्पतिं यज्ञमकृण्वत ऋषिं प्रियां यमस्तन्वं प्रारिरेचीत् ॥४॥

देवताहरूमा कसलाई मृत्युको डर छ ? मानिसमा कसलाई अमरता चाहिँदैन ? याज्ञिकहरू मन्त्रले पावन यज्ञ सम्पादन गर्दछन्। त्यसबाट हाम्रो शरीर आरोग्य लाभ गरेर मृत्युको भयबाट मुक्त रहन्छ।

सप्त क्षरन्ति शिशवे मरुत्वते पित्रे पुत्रासो अप्यवीवतन्नृतम्।
उभे इदस्योभयस्य राजत उभे यतेते उभयस्य पुष्यतः। ५॥

पुत्रका रूपमा रहेका ऋत्विक्हरू प्रशंसनीय श्रेष्ठ पिताका रूपमा रहेका सोमका लागि सात छन्द उच्चारण गर्दै स्तोत्र गाउँछन्। यी दुवै शकटले दुवै लोक प्रकाशित गर्दछन्। यी दुवै आफ्ना तेजले देवता र मानिसलाई परिपुष्ट गर्दछन्।

[सूक्त - १४]

ऋषि - यम वैवस्वत। देवता - यम श्वानद्वय। छन्द - त्रिष्टुप् अनुष्टुप् बृहती।

परेयिवांसं प्रवतो महीरनु बहुभ्यः पन्थामनुपस्पशानम्।
वैवस्वतं सङ्गमनं जनानां यमं राजानं हविषा दुवस्य ॥१॥

हे यजमान ! पितृका अधिपति यमदेवलाई पुरोडाश आदि समर्पित गर्दै सेवा गर। यमदेव पुण्यकर्मीलाई सुखद धाममा लैजान्छन्। उनी अनेकौंलाई कल्याणकारी मार्गको निर्देश गर्दछन्। विवस्वान्‌का पुत्र यमका नजिक मानिसले आखिरमा जानै पर्दछ।

यमो नो गातुं प्रथमो विवेद नैषा गव्यूतिरपभर्तवा उ।
यत्रा नः पूर्वे पितरः परेयुरेना जज्ञानाः पथ्या३ अनु स्वाः ॥२॥

यमदेवका नियमको व्यवस्था बदल्न कसैले सक्दैन। जुन बाटो हाम्रा पुर्खा गए, उसै बाटोबाट सबै मानिसले आआफ्ना कर्मअनुसार लक्ष्यतर्फ जानै पर्दछ। हे सर्वोत्तम यमदेव ! तिमी सबै मानिसका पापरूपी दुष्कर्म र पुण्यरूपी सत्कर्म जान्दछौ।

मातली कव्यैर्यमो अङ्गिरोभिर्बृहस्पतिर्ऋक्वभिर्वावृधानः।
याँश्च देवा वावृधुर्ये च देवान्त्स्वाहान्ये स्वधयान्ये मदन्ति ॥३॥

सारथी, अधिपति इन्द्रदेव काव्ययुक्त पुर्खाका सहायताले यम, अङ्गिरा आदि पितृहरू र बृहस्पतिदेव, ऋक्व नामका पितृहरूका सहयोगले उन्नति गर्दछन्। उनी देवताहरूलाई संवर्द्धित गर्ने हुन् र उनले जसलाई बढाउँछन्, तिनले राम्रो किसिमले प्रगति गर्दछन्। तिनीहरूमध्ये कोही स्वाहाले र कोही स्वधाले सन्तुष्ट हुन्छन्।

इमं यम प्रस्तरमा हि सीदाङ्गिरोभिः पितृभिः संविदानः।
आ त्वा मन्त्राः कविशस्ता वहन्त्वेना राजन्हविषा मादयस्व ॥४॥

हे यमदेव ! अङ्गिरा आदि पितृसँग तिमी हाम्रा उत्तम यज्ञमा आएर विराजमान होऊ। ज्ञानी ऋत्विक्हरूका स्तोत्रले तिमीलाई आमन्त्रित गरोस्। हे मृत्युपति यम ! आहुतिले तृप्त भएर हामीलाई आनन्दित गर।

अङ्गिरोभिरा गहि यज्ञियेभिर्यम वैरूपैरिह मादयस्व।
विवस्वन्तं हुवे यः पिता तेऽस्मिन्यज्ञे बर्हिष्या निषद्य ॥५॥

हे मृत्युदेव ! नाना स्वरूप धारण गर्ने पूजनीय अङ्गिरादेवतासित यज्ञस्थलमा आऊ र यस यजमानलाई प्रसन्न गराऊ। तिम्रा पिता विवस्वान् हुन्, उनलाई पनि हामी यज्ञमा आमन्त्रित गर्दछौं। उनी यस यज्ञस्थलका पूजावेदीमा कुशका आसनमा विराजमान भएर हामीलाई आनन्दित गरुन्।

अङ्गिरसो नः पितरो नवग्वा अथर्वाणो भृगवः सोम्यासः।
तेषां वयं सुमतौ यज्ञियानामपि भद्रे सौमनसे स्याम ॥६॥

अङ्गिरा, अथर्वा र भृगु आदि हाम्रा पितृ भर्खरै आएका छन्। उनीहरू सबै सोमको इच्छा गर्दछन्। ती पितृहरूको कृपादृष्टि हामीलाई उपलब्ध होस्। हामी उनीहरूका कृपाले कल्याणकारी मार्गतिर बढौं।

प्रेहि प्रहि पथिभिः पूर्व्येभिर्यत्रा नः पूर्वे पितरः परेयुः।
उभा राजाना स्वधया मदन्ता यमं पश्यासि वरुणं च देवम् ॥७॥

हे पितृ ! जुन सनातन मार्गबाट हाम्रा पुर्खा पितृहरू गए, त्यसैबाट तिमी पनि जाऊ। त्यहाँ स्वधारूपी अमृतान्नले सन्तुष्ट भएर राजा यम र वरुणदेवको दर्शन गर।

सं गच्छस्व पितृभिः सं यमेनेष्टापूर्तेन परमे व्योमन्।
हित्वायावद्यं पुनरस्तमेहि सं गच्छस्व तन्वा सुवर्चाः ॥८॥

हे पितृ ! तिमी उत्तम लोक स्वर्गमा यज्ञ आदि दानपुण्य कर्मको फलस्वरूप पितृसँग एकाकार होऊ। पाप कर्मका प्रभावबाट मुक्त भएर फेरि घरमा प्रवेश गर र तेजस्वी देवताको रूप प्राप्त गर।

अपेत वीत वि च सर्पतातोऽस्यमा एतं पितरो लोकमक्रन्।
अहोभिरद्भिरक्तुभिर्व्यक्तं यमो ददात्यवसानमस्मै ॥९॥

हे दुष्ट पिशाच हो ! पितृले यस मृतात्माका लागि यो दाहस्थल निर्धारित गरेका हुन्। तिमीहरू यो ठाउँ छोडेर टाढा जाओ। यमदेवले दिनरात सेचन गरेको यो स्थान मृतक देहका लागि प्रदान गरेका छन्।

अति द्रव सारमेयौ श्वानौ चतुरक्षौ शवलौ साधुना पथा।
अथा पितृन्त्सुविदत्रौं उपेहि यमेन ये सधमादं मदन्ति ॥१०॥

हे मृतात्मा ! चार आँखायुक्त अद्‌भुत रूपका यी दुई सारमेय कुकुरका नजिक चाँडै जाऊ। पितृहरू यमसँग सधैं हर्षित रहन्छन्, उनै विशिष्ट ज्ञानले सम्पन्न पितृको श्रेणी तिमी पनि प्राप्त गर।

यौ ते श्वानौ यम रक्षितारौ चतुरक्षौ पथिरक्षी नृचक्षसौ।
ताभ्यामेनं परि देहि राजन्त्स्वस्ति चास्मा अनमीवं च धेहि। ११॥

हे मृत्युदेव ! तिम्रा गृहरक्षक, मार्गरक्षक र ऋषिहरूबाट ख्याति प्राप्त गरेका, चार आँखा भएका दुई कुकुरबाट मृतात्माको संरक्षण गराऊ। त्यसपछि मृतात्मालाई कल्याणको भागी बनाएर पाप कर्मबाट मुक्त गराऊ।

उरूणसावसुतृपा उदुम्बलौ यमस्य दूतौ चरतो जनौं अनु।
तावस्मभ्यं दृशये सूर्याय पुनर्दातामसुमद्येह भद्रम् ॥१२॥

लामो नाक भएका, प्राणहन्ता र अति सामर्थ्यशाली यी दुई कुकुर यमदेवका दूत हुन्। यी मानिसको प्राण हरण गर्ने लक्ष्यमा घुम्दछन्। यी दुवैले हामीलाई सूर्यको दर्शन गर्ने लाभ प्रदान गर्नका लागि यस स्थानमा प्राण दान गर्ने कृपा गरुन्।

यमाय सोमं सुनुत यमाय जुहुता हविः।
यमं ह यज्ञो गच्छत्यग्निदूतो अरङ्कृतः ॥१३॥

हे ऋत्विक् हो ! यमदेवका लागि हविष्यान्न समर्पित गर्नुका साथै यिनीहरूलाई पनि तयार पारिएको सोमरस प्रदान गर। अग्निदेव जुन यज्ञका वाहक हुन्, त्यो यज्ञ विभिन्न माङ्गलिक औषधिले युक्त भएर यमदेवतर्फ गमन गर्दछ।

यमाय घृतवद्धविर्जुहोत प्र च तिष्ठत।
स नो देवेष्वा यमद्दीर्घमायुः प्र जीवसे ॥१४॥

हे ऋत्विक् हो ! यमदेवका लागि घिउले परिपूर्ण हविष्यले यजन गर्दै स्तुति गर। ती यमदेवले हाम्रो दीर्घजीवनका निम्ति लामो आयु प्रदान गरुन्।

यमाय मधुमत्तमं राज्ञे हव्यं जुहोतन।
इदं नम ऋषिभ्यः पूर्वजेभ्यः पथिकृद्भ्यः ॥१५॥

हे ऋत्विक् हो ! तिमीहरू मृत्युराजका लागि मिष्ठान्नयुक्त आहुति प्रदान गर। उहिलेका पूर्वज ऋषिले हामीलाई सन्मार्गको प्रेरणा दिएका हुनाले उनीहरूलाई नमस्कार गरौं।

त्रिकद्रुकेभिः पतति षडुर्वीरेकमिद्बृहत्।
त्रिष्टुब्गायत्री छन्दांसि सर्वा ता यम आहिता ॥१६॥

मृत्युदेव यम त्रिकद्रुक नामका यज्ञमा संरक्षणका लागि उपस्थित होऊन्। उनै यमदेव छ वटा ठाउँमा निवास गर्दछन्। त्रिष्टुप्, गायत्री र अन्य सबै छन्दका माध्यमबाट हामी उनको स्तुतिगान गर्दछौं।

[सूक्त - १५]

ऋषि - शङ्ख यामायन। देवता - पितृगण। छन्द - त्रिष्टुप् जगती।

उदीरतामवर उत्परास उन्मध्यमाः पितरः सोम्यासः।
असुं य ईयुरवृका ऋतज्ञास्ते नोऽवन्तु पितरो हवेषु ॥१॥

हाम्रा उत्तम, मध्यम र निम्न तीनै खालका पितृ यस यज्ञमा कृपापूर्वक उपस्थित भएका छन्। उनीहरू पुत्रको प्राणरक्षाका लागि यज्ञमा समर्पित हविष्यान्न ग्रहण गरुन् र हाम्रो रक्षा गरुन्।

इदं पितृभ्यो नमो अस्त्वद्य ये पूर्वासो य उपरास ईयुः।
ये पार्थिवे रजस्या निषत्ता ये वा नूनं सुवृजनासु विक्षु ॥२॥

पितामह आदि पूर्वज र तिनीभन्दा पछि मृत्यु भएका पितृ वा आज जो पृथ्वीको राजसी भोग उपभोग गर्ने सौभाग्यवान् वैभवसम्पन्न बन्धुबान्धवका रूपमा उत्पन्न भएका छन्, ती सबैलाई नमस्कार छ।

आहं पितृन्त्सुविदत्राँ अवित्सि नपातं च विक्रमणं च विष्णोः।
बर्हिषदो ये स्वधया सुतस्य भजन्त पित्वस्त इहागमिष्ठाः ॥३॥

हामीले यज्ञको अनुष्ठान सम्पन्न गर्ने विधिविधान सबै पितृबाटै सिकेका हौं। उनीहरू यो कुरो राम्ररी जान्दछन्। सबै पितृ यज्ञशालामा कुशका आसनमा प्रतिष्ठित भएर हविष्यान्न एवं सोमरस ग्रहण गरुन्।

बर्हिषदः पितर ऊत्यर्वागिमा वो हव्या चकृमा जुषध्वम्।
त आ गतावसा शन्तमेनाथा नः शं योररपो दधात ॥४॥

हे पितृ हो ! हाम्रो आह्वानमा उपस्थित भएर कुशका आसनमा बस। यज्ञीय पदार्थहरू तिमीहरूका लागि प्रस्तुत छन्। स्वीकार गरेर हामीलाई सबै किसिमले उपकार गर। पापबाट जोगाएर कल्याण गर।

उपहूताः पितरः सोम्यासो बर्हिष्येषु निधिषु प्रियेषु।
त आ गमन्तु त इह श्रुवन्त्वधि ब्रुवन्तु तेऽवन्त्वस्मान् ॥५॥

हामी आफ्ना पितृ आह्वान गर्दछौं। कुशका आसनमा विराजमान भएर प्रस्तुत सोमरस आदि हविष्यान्न उपभोग गर। हाम्रो प्रार्थना स्वीकार गरेर प्रसन्न हुँदै रक्षा गर।

आच्या जानु दक्षिणतो निषद्येमं यज्ञमभि गृणीत विश्वे।
मा हिंसिष्ट पितरः केनचिन्नो यद्व आगः पुरुषता कराम ॥६॥

हे पितृ हो ! हामी अबोध बालकको त्रुटि क्षमा गर्दै यज्ञशालामा दक्षिणतिर घुँडामा अडिएर पृथ्वीमा विराजमान भएर यज्ञको शोभा बढाइदेओ।

आसीनासो अरुणीनामुपस्थे रयिं धत्त दाशुषे मर्त्याय।
पुत्रेभ्यः पितरस्तस्य वस्वः प्र यच्छत त इहोर्जं दधात ॥७॥

अरुण वर्णका ज्वालाका नजिक बस्नेले यजमानलाई धनधान्य प्रदान गरुन्। हे पितृहरू हो ! जयमानका पुत्रपौत्रलाई पनि धनऐश्वर्य प्रदान गर। त्यसबाट उनीहरू यज्ञ आदि कर्मका लागि धन नियोजित गर्न सकून्।

ये नः पूर्वे पितरः सोम्यासोऽनूहिरे सोमपीथं वसिष्ठाः।
तेभिर्यमः संरराणो हवींष्युशन्नुशद्भिः प्रतिकाममत्तु ॥८॥

सोमरस तयार गर्ने वसिष्ठ आदि याजकहरू वैभवसम्पन्न भएर सोमपायी पितृलाई हविरूपी सोम प्रदान गर्दछन्। पितृहरूसँगै पितृका अधिपति यम पनि हविष्यको कामना गर्दछन्। जसले हविको कामना गर्दछन्, ती सबैले त्यो प्राप्त गर्दछन्।

ये तातृपुर्देवत्रा जेहमाना होत्राविदः स्तोमतष्टासो अर्कैः।
आग्ने याहि सुविदत्रेभिरर्वाङ् सत्यैः कव्यैः पितृभिर्घर्मसद्भिः ॥९॥

हे अग्निदेव ! यज्ञविधानका ज्ञाता र ऋचा दर्शन गर्ने पितृले देवत्व प्राप्त गरिसके। यदि उनीहरू श्रद्धाभावको अपेक्षा गर्दै हाम्रा यज्ञमा आऊन्। ती सम्माननीय, ज्ञानसम्पन्न, सत्यव्रती, मेधावी, तेजसम्पन्न पितृहरू सँगै हामीकहाँ उपस्थित होऊन्।

ये सत्यासो हविरदो हविष्पा इन्द्रेण देवैः सरथं दधानाः ।
आग्ने याहि सहस्रं देववन्दैः परैः पूर्वैः पितृभिर्घर्मसद्भिः ॥१०॥

सत्यव्रती, हविष्यका इच्छुक, सोमरस पान गर्ने पितृहरू इन्द्रदेव र अन्य देवतासँग संयुक्त रूपले रथमा विराजमान भएका छन्। हे अग्निदेव ! तिमी ती देवताको उपासना गर्ने, प्राचीन यज्ञीय अनुष्ठान निर्वाह गर्ने पितृलाई स्तुतिले आह्वान गर्दै सँगै आऊ।

अग्निष्वात्ताः पितर एह गच्छत सदःसदः सदत सुप्रणीतयः ।
अत्ता हवींषि प्रयतानि बर्हिष्यथा रयिं सर्ववीरं दधातन ॥११॥

हे अग्निजस्तै तेजस्वी पितृ हो ! यहाँ आओ र निर्धारित आसनमा बस। हे पूजनीय पितृ हो ! पात्रमा राखिएको हविष्यान्न सेवन गरेर सन्तान आदिले युक्त ऐश्वर्यसाधन हामीलाई प्रदान गर।

त्वमग्न ईडितो जातवेदोऽवाड्ढव्यानि सुरभीणि कृत्वी ।
प्रादाः पितृभ्यः स्वधया ते अक्षन्नद्धि त्वं देव प्रयता हवींषि ॥१२॥

हे सम्पूर्ण ज्ञानले सम्पन्न अग्निदेव ! तिमीलाई हामी स्तुति र प्रार्थना गर्दछौं। हाम्रा श्रेष्ठ सुगन्धित आहुति स्वीकार गरेर पितृलाई प्रदान गर। पितृहरू स्वधाद्वारा समर्पित आहुति ग्रहण गरुन्। हे अग्निदेव ! तिमी श्रद्धाको भावनाले समर्पित आहुति सेवन गर।

ये चेह पितरो ये च नेह यांश्च विद्म याँ उ च न प्रविद्म ।
त्वं वेत्थ यति ते जातवेदः स्वधाभिर्यज्ञं सुकृतं जुषस्व ॥१३॥

हे सर्वज्ञाता अग्निदेव ! यहाँ जुन पितृ उपस्थित छन्, हामीसित जो परिचित छन्, हाम्रा आह्वानमा जो आएका छैनन् वा जो हामीसित अपरिचित छन्, ती सबै पितृका तिमी पूर्ण ज्ञाता छौ। हे पितृ हो ! स्वधायुक्त यो श्रेष्ठ यज्ञ स्वीकार गर।

ये अग्निदग्धा ये अनग्निदग्धा मध्ये दिवः स्वधया मादयन्ते ।
तेभिः स्वराडसुनीतिमेतां यथावशं तन्वं कल्पयस्व ॥१४॥

हे अग्निदेव ! जुन पितृको अग्निसंस्कार भयो वा जसको संस्कार सम्पन्न भएको छैन, जुन पितृहरू स्वधायुक्त अन्नले सन्तुष्ट भएर स्वर्गलोकमा रमाएका छन्, तिनीहरूसँगै सुगन्धित द्रव्य सेवन गर र पितृहरूका आत्मालाई देवत्व प्रदान गर।

[सूक्त - १६]

ऋषि - दमन यामायन। देवता - अग्नि। छन्द - त्रिष्टुप् अनुष्टुप्।

मैनमग्ने वि दहो माभि शोचो मास्य त्वचं चिक्षिपो मा शरीरम् ।
यदा शृतं कृणवो जातवेदोऽथेमेनं प्र हिणुतात्पितृभ्यः ॥१॥

हे अग्निदेव ! मृतात्मालाई पीडित नगरीकन संस्कार सम्पन्न गराऊ। यस मृतात्मालाई छिन्नभिन्न नगराऊ। हे सम्पूर्ण ज्ञानले सम्पन्न अग्निदेव ! तिम्रा ज्वालाले यो देह भस्म गराएपछि यसलाई पनि पितृकहाँ पठाइदेऊ।

शृतं यदा करसि जातवेदोऽथेमेनं परि दत्तात्पितृभ्यः ।
यदा गच्छात्यसुनीतिमेतामथा देवानां वशनीर्भवाति ॥२॥

हे ज्ञानसम्पन्न अग्निदेव ! मृतशरीर पूर्ण रूपले डढाएपछि यसको मृतात्मा आफन्तलाई जिम्मा लगाऊ। मृतात्माले फेरि प्राण धारण गरोस् र देवताको आश्रयमा रहोस्।

सूर्यं चक्षुर्गच्छतु वातमात्मा द्यां च गच्छ पृथिवीं च धर्मणा ।
अपो वा गच्छ यदि तत्र ते हितमोषधीषु प्रति तिष्ठा शरीरैः ॥३॥

हे मृत मानिस ! अनेक प्राण, नेत्र, वायु र सूर्यले संयुक्त होऊ। तिमी आफ्ना पुण्य कर्मको फल प्राप्त गर्नका लागि स्वर्ग, पृथ्वी वा जलमा निवास गर। यदि वृक्ष वा वनस्पतिमा तिम्रो हित हुनेछ भने सूक्ष्म शरीर लिएर त्यतै प्रवेश गर।

अजो भागस्तपसा तं तपस्व तं ते शोचिस्तपतु तं ते अर्चिः ।
यास्ते शिवास्तन्वो जातवेदस्ताभिर्वहैनं सुकृतामु लोकम् ॥४॥

हे अग्निदेव ! यस मृत पुरुषमा जुन अविनाशी ईश्वरीय अंश छ, त्यसलाई तिमी आफ्ना तेजले तपाएर प्रखर गराऊ। ज्वालाले त्यसलाई बलियो बनाऊ। हे सर्वज्ञानले सम्पन्न अग्निदेव ! आफ्ना कल्याणकारी विभूतिले त्यसलाई पुण्यात्माका लोकमा लगिदेऊ।

अव सृज पुनरग्ने पितृभ्यो यस्त आहुतश्चरति स्वधाभिः।
आयुर्वसान उप वेतु शेषः सं गच्छतां तन्वा जातवेदः ॥५॥

हे अग्निदेव ! मृत पुरुष तिम्रा लागि स्वधायुक्त आहुतिको रूप ग्रहण गर्दछ। उसलाई तिमी फेरि पितृका लागि सिर्जना गर। हे जातवेद अग्निदेव ! यसका आयुको जुन भाग बाँकी छ, त्यो प्राणसम्पन्न होस् र पुनः बलियो शरीरधारी होओस्।

यत्ते कृष्णः शकुन आतुतोद पिपीलः सर्प उत वा श्वापदः।
अग्निष्टद्विश्वादगदं कृणोतु सोमश्च यो ब्राह्मणाँ आविवेश ॥६॥

हे मृत मनुष्य ! तिम्रो शरीर काग, कमिला, सर्प वा अरू कुनै हिंसक पशुले चोट लगाएको भए सर्वभक्षक अग्निदेवले त्यो अङ्ग पीडारहित गराऊन्। शरीरभित्रको जुन पोषक रसका रूपमा सोम विद्यमान छ, त्यसले पनि त्यसको दुःख मेटाइदेओस्।

अग्नेर्वर्म परि गोभिर्व्ययस्व सं प्रोर्णुष्व पीवसा मेदसा च।
नेत्त्वा धृष्णुर्हरसा जर्हृषाणो दधृग्विधक्ष्यन्पर्यङ्ख्याते ॥७॥

हे मृत पुरुष ! तिमी आफ्ना मांसमज्जाले पूर्ण छौ। स्वयं अग्निको ज्वालारूपी कवच धारण गरेका हुनाले शरीर भस्मीभूत गर्न उपस्थित अग्निदेव तिम्रा अङ्ग जलाउँदैनन्।

इममग्ने चमसं मा वि जिह्वरः प्रियो देवानामुत सोम्यानाम्।
एष यश्चमसो देवपानस्तस्मिन्देवा अमृता मादयन्ते ॥८॥

हे अग्निदेव ! देवता र पितृका लागि प्रिय यस चमस पात्रलाई तिमी हिंसित नगर। यो चमस पात्र केवल देवताले सोमपान गर्नका लागि सुरक्षित छ। यसैले सम्पूर्ण अविनाशी देवता र पितृहरू आनन्दित छन्।

क्रव्यादमग्निं प्र हिणोमि दूरं यमराज्ञो गच्छतु रिप्रवाहः।
इहैवायमितरो जातवेदा देवेभ्यो हव्यं वहतु प्रजानन् ॥९॥

मांसभक्षक अग्निदेवलाई हामी यहाँदेखि पर राख्दछौं। ती शवदाहक अग्निदेव मृत्युराज यमकै नजिक रहून्। यहाँ अर्कै सुप्रसिद्ध जातवेदा अग्निदेव छन्, यिनले हाम्रो आहुति देवतासमक्ष पुऱ्याउँछन्।

यो अग्निः क्रव्यात्प्रविवेश वो गृहमिमं पश्यन्नितरं जातवेदसम्।
तं हरामि पितृयज्ञाय देवं स घर्ममिन्वात्परमे सधस्थे ॥१०॥

शवदाहक अग्निदेव चितास्थलमा निवास गर्दछन्। पितृयज्ञमा उनलाई परै राखिन्छ र अर्कै पवित्र यज्ञाग्नि स्थापित गरिन्छ। ती सर्वश्रेष्ठ यज्ञस्थलमा प्रतिष्ठित अग्निदेवले हाम्रो तेजस्वी यज्ञ पूरा गरुन्।

यो अग्निः क्रव्यवाहनः पितॄन्यक्षदृतावृधः।
प्रेदु हव्यानि वोचति देवेभ्यश्च पितृभ्य आ ॥११॥

श्राद्धकर्मका समयमा समर्पित हव्य वहन गर्ने अग्निदेव यज्ञलाई समृद्धिसम्पन्न बनाउँछन्। उनी देवता र पितृसम्म हव्य पुऱ्याएर उनको सेवा गर्दछन्।

उशन्तस्त्वा नि धीमह्युशन्तः समिधीमहि।
उशन्नुशत आ वह पितॄन्हविषे अत्तवे ॥१२॥

हे पवित्र यज्ञका अग्निदेव ! हामी श्रद्धापूर्वक प्रयत्न गर्दै तिमीलाई प्रतिष्ठित गर्दछौं र अधिक प्रज्वलित गराउने प्रयास गर्दछौं। देवता र पितृले यज्ञको कामना गर्दछन्, समर्पित गरिएको हव्य तिमी उनीहरूसम्म पुऱ्याइदिन्छौ।

यं त्वमग्ने समदहस्तमु निर्वापया पुनः।
कियाम्ब्वत्र रोहतु पाकदूर्वा व्यल्कशा ॥१३॥

हे अग्निदेव ! तिमीले जुन भूस्थल डढाएका छौ, त्यसलाई फेरि तापविनाको बनाऊ। यहाँ पानीको चिस्यानयुक्त, पवित्र र अनेकौं किसिमका दुबो आदि घाँस उम्रिऊन्।

शीतिके शीतिकावति ह्लादिके ह्लादिकावति।
मण्डूक्यात्र सु सं गम इमं स्वग्निं हर्षय ॥१४॥

शीतल र आनन्ददायी हे पृथिवी ! तिमी सबैका लागि आनन्दप्रद, मङ्गलकारी र शीतलता प्रदान गर्ने औषधिले परिपूर्ण छौ। तिमी अग्निदेवलाई सन्तुष्ट गरेर भ्यागुताको रहरअनुसार जलको वर्षाले सम्पन्न होऊ।

[सूक्त - १७]

ऋषि - देवश्रवा यामायन। देवता - सरयण्यू पूषा देवता। छन्द - त्रिष्टुप् अनुष्टुप्।

**त्वष्टा दुहित्रे वहतुं कृणोतीतीदं विश्वं भुवनं समेति।**
**यमस्य माता पर्युह्यमाना महो जाया विवस्वतो ननाश ॥१॥**

त्वष्टाकी पुत्री प्रकृतिले वहन गर्न योग्य वरसित विवाह गर्दा सारा विश्वका प्राणी भेला भए। यमकी माताको सम्बन्ध हुँदा विवस्वान्की महिमाशाली पत्नी हराइन्।

**अपागूहन्नमृतां मर्त्येभ्यः कृत्वी सवर्णामदुर्विवस्वते।**
**उताश्विनावभरद्यत्तदासीदजहादु द्वा मिथुना सरण्यूः ॥२॥**

अमर सरण्युलाई देवताहरूले मानिसबाट अचम्म किसिमले लुकाए। सरण्युजस्तै अर्की आइमाई बनाएर विवस्वान् सूर्यलाई प्रदान गरे। त्यस बेला सरण्यु त्यहाँ थिइन्। उनले आरोग्यप्रद अश्विनीकुमारलाई गर्भमा धारण गरिन् र जुम्ल्याहा सन्तान जन्मिए।

**पूषा त्वेतश्च्यावयतु प्र विद्वाननष्टपशुर्भुवनस्य गोपाः।**
**स त्वैतेभ्यः परि ददत्पितृभ्योऽग्निर्देवेभ्यः सुविदत्रियेभ्यः ॥३॥**

ज्ञानवान्, सम्पूर्ण विश्वका संरक्षक र पशुधनले सम्पन्न पूषादेवले तिमीलाई सुन्दर लोकतिर लिएर जाऊन्। अग्निदेवले तिमीलाई धनऐश्वर्यले सम्पन्न बनाऊन् र सुखका दाता देवताहरूले र पितृका नजिकै पुऱ्याऊन्।

**आयुर्विश्वायुः परि पासति त्वा पूषा त्वा पातु प्रपथे पुरस्तात्।**
**यत्रासते सुकृतो यत्र ते ययुस्तत्र त्वा देवः सविता दधातु ॥४॥**

सर्वत्र सञ्चरणशील प्राणवायुले तिमीलाई सबै किसिमले संरक्षण गरोस्। असल मार्गदर्शक, सबैभन्दा अघि रहने पूषादेवले तिम्रो संरक्षण गरुन्। जुन श्रेष्ठ लोकमा पुण्य आत्मा प्रतिष्ठित छन्, सवितादेवले तिमीलाई त्यहाँ पनि प्रतिष्ठित गरुन्।

**पूषेमा आशा अनु वेद सर्वाः सो अस्माँ अभयतमेन नेषत्।**
**स्वस्तिदा आघृणिः सर्ववीरोऽप्रयुच्छन्पुर एतु प्रजानन् ॥५॥**

सम्पूर्ण विश्वका पालक पूषादेव सबै दिशासित परिचित छन्। उनले हामीलाई भयमुक्त मार्गमा लैजाऊन्। कल्याणकारी, सर्वोत्तम, दिव्यतायुक्त र मेधावी पूषादेव सधैँ हाम्रा अगुवा होऊन्।

**प्रपथे पथामजनिष्ट पूषा प्रपथे दिवः प्रपथे पृथिव्याः।**
**उभे अभि प्रियतमे सधस्थे आ च परा च चरति प्रजानन् ॥६॥**

पूषादेव स्वर्ग र पृथिवीका माझमा रहेका मार्गमध्ये सबैभन्दा असल र उत्तम मार्गमा उत्पन्न भएका हुन्। द्यावापृथिवी, जो आपसमा स्नेहयुक्त र श्रेष्ठ स्थानले सम्पन्न छन्, उनका बीचमा मेधावी पूषादेव विशेष रूपले सुशोभित हुन्छन्।

**सरस्वतीं देवयन्तो हवन्ते सरस्वतीमध्वरे तायमाने।**
**सरस्वतीं सुकृतो अह्वयन्त सरस्वती दाशुषे वार्यं दात् ॥७॥**

दैवी गुणका इच्छुक मानिसहरू सरस्वती देवलाई आह्वान गर्दछन्। यज्ञ विस्तृत भएपछि उनी सरस्वतीदेवीको स्तुति गर्दछन्। श्रेष्ठ पुण्यात्माहरूले देवी सरस्वतीलाई आह्वान गर्दा उनले दानीहरूको आकाङ्क्षा परिपूर्ति गर्दछिन्।

**सरस्वति या सरथं ययाथ स्वधाभिर्देवि पितृभिर्मदन्ती।**
**आसद्यास्मिन्बर्हिषि मादयस्वानमीवा इष आ धेह्यस्मे ॥८॥**

हे सरस्वती देवी ! तिमी पितृहरूसँग स्वधायुक्त हविष्यान्नले सन्तुष्ट भएर प्रसन्न हुँदै एकै रथमा यात्रा गर। यस यज्ञमा श्रेष्ठ आसनमा विराजमान भएर हामीलाई आरोग्यता र अन्न प्रदान गर।

**सरस्वतीं यां पितरो हवन्ते दक्षिणा यज्ञमभिनक्षमाणाः।**
**सहस्रार्घमिडो अत्र भागं रायस्पोषं यजमानेषु धेहि ॥९॥**

यज्ञस्थलका दक्षिण भागमा प्रतिष्ठित पितृहरू सरस्वती देवीलाई आह्वान गर्दछन्। यज्ञसम्पादक यजमानलाई उनी प्रचुर मात्रामा दिव्य धन र पोषक अन्न प्रदान गरुन्।

आपो अस्मान्मातरः शुन्धयन्तु घृतेन नो घृतप्वः पुनन्तु।
विश्वं हि रिप्रं प्रवहन्ति देवीरुदिदाभ्यः शुचिरा पूत एमि ॥१०॥

आमाजस्तै सह्यार गर्ने जलले हामीलाई पवित्र बनाओस्। चिउका रूपमा रहेका जलले हाम्रो अशुद्धता निवारण गरोस्। जलको दिव्यताका दिव्य स्रोतले सबै पाप शोधन गरोस्। जलले शुद्ध र पवित्र बनेर हामी उँभो लाग्न सकौं।

द्रप्सश्चस्कन्द प्रथमाँ अनु द्यूनिमं च योनिमनु यश्च पूर्वः।
समानं योनिमनु सञ्चरन्तं द्रप्सं जुहोम्यनु सप्त होत्राः ॥११॥

सोमरस प्राचीन ऋषि तथा देवताका लागि अन्तरिक्ष लोकमा उत्पन्न भएको हो। हाम्रा औंटिला पुर्खाले यो सोमरस फेला पारे। हामी सात याज्ञिक, उसै लोकमा रहने त्यस दिव्य सोमरसलाई आहुतिका रूपमा समर्पित गर्दछौं।

यस्ते द्रप्सः स्कन्दति यस्ते अंशुर्बाहुच्युतो धिषणाया उपस्थात्।
अध्वर्योर्वा परि वा यः पवित्रात्तं ते जुहोमि मनसा वषट्कृतम् ॥१२॥

हे सोमदेव ! तेजस्वी रूपले प्रवाहित हुने, पवित्रतापूर्वक भर्ने अथवा पेल्ने फल्याकका नजिकै हुने ऋत्विक्का हातबाट खस्ने तिम्रा अवयव र रसलाई हामी नमस्कार गर्दै यज्ञमा समर्पित गर्दछौं।

यस्ते द्रप्सः स्कन्नो यस्ते अंशुरवश्च यः परः स्रुचा।
अयं देवो बृहस्पतिः सं तं सिञ्चतु राधसे ॥१३॥

हे सोमदेव ! स्रुक नामका पात्रबाट तल चुहुने तिम्रा रसको अंश र प्रवाहित हुने तिम्रा रसको भाग बृहस्पतिदेवले ग्रहण गरुन्। त्यसबाट हाम्रो ऐश्वर्य वृद्धि होस्।

पयस्वतीरोषधयः पयस्वन्मामकं वचः।
अपां पयस्वदित्पयस्तेन मा सह शुन्धत ॥१४॥

हे जलदेव ! औषधि तिम्रा पोषणयुक्त रसले ओतप्रोत छ। हाम्रो सारगर्भित स्तोत्रजस्तै जलको सूक्ष्म अंश पनि अति सूक्ष्म छ। त्यसैसँग हामीलाई पवित्रता प्रदान गर।

[सूक्त - १८]

ऋषि - यामायन। देवता - मृत्यु त्वष्टा पितृमेध। छन्द - त्रिष्टुप् जगती अनुष्टुप्।

परं मृत्यो अनु परेहि पन्थां यस्ते स्व इतरो देवयानात्।
चक्षुष्मते शृण्वते ते ब्रवीमि मा नः प्रजां रीरिषो मोत वीरान् ॥१॥

हे मृत्युदेव ! तिमी सबैभन्दा भिन्न र अर्कै मार्गबाट गमन गर। तिमी देवयानको मार्गभन्दा भिन्न मार्गबाट प्रस्थान गर। दिव्य दृष्टिसम्पन्न हे सर्वज्ञ देव ! हाम्रा पुत्रपौत्रादि सन्तान र वीरलाई हिंसित नगर भन्ने तिमीसित विनम्र आग्रह छ।

मृत्योः पदं योपयन्तो यदैत द्राघीय आयुः प्रतरं दधानाः।
आप्यायमानाः प्रजया धनेन शुद्धाः पूता भवत यज्ञियासः ॥२॥

हे मृत पुरुषका आफन्त हो ! जुन मानिस मृत्युको मार्ग त्यागेर हिँड्दछन्, उनले दीर्घ र श्रेष्ठ आयु धारण गर्दछन्। तिमीहरू सबैले त्यसै गर। हे याज्ञिक यजमान हो ! सबै पुत्रपौत्र आदि ऐश्वर्यले सम्पन्न भएर पापबाट मुक्त होओ र शुद्ध तथा पवित्र जीवन व्यतीत गर।

इमे जीवा वि मृतैराववृत्रन्नभूद्भद्रा देवहूतिर्नो अद्य।
प्राञ्चो अगाम नृतये हसाय द्राघीय आयुः प्रतरं दधानाः ॥३॥

जीवित मानिस मरिसकेका आफन्तका नजिकै बसिनरहून्। हाम्रो आजको यो पितृमेध यज्ञ कल्याणकारी ढङ्गले पूर्ण होस्। हामी दीर्घ आयु प्राप्त गरेर हाँसीखुसी आनन्दमय जीवन बाँचौं। हामी पूर्व दिशातर्फ मुख गरेर अगाडिको यात्रामा बढौं।

इमं जीवेभ्यः परिधिं दधामि मैषां नु गादपरो अर्थमेतम्।
शतं जीवन्तु शरदः पुरूचीरन्तर्मृत्युं दधतां पर्वतेन ॥४॥

प्राणधारी मानिसको संरक्षणका लागि हामी यो परिधि तयार गर्दछौं। यसबाट कोही पनि अल्पायुको मृत्युमा नपरोस्। यी पुत्रपौत्रादिले सय वर्षको आयु प्राप्त गरुन्। हामी ढुङ्गाको बाधा उपस्थित गरेर मृत्युलाई रोक्दछौं।

यथाहान्यनुपूर्वं भवन्ति यथा ऋतव ऋतुभिर्यन्ति साधु।
यथा न पूर्वमपरो जहात्येवा धातरायूंषि कल्पयैषाम् ॥५॥

जसरी एउटा दिन बितेपछि क्रमको एक बित्दछ, जसरी ऋतु एउटा बितेपछि एकको क्रम बितेको हुन्छ, जसरी पहिले जन्मेका वृद्ध पुरुष छँदाछँदै उनका नातिपनातिले शरीर त्याग गर्दैनन्, त्यसै गर हे विधाता। हाम्रा स्वजनलाई तिमी दीर्घजीवनका लाभबाट वञ्चित नगर।

आ रोहतायुर्जरसं वृणाना अनुपूर्वं यतमाना यतिष्ठ।
इह त्वष्टा सुजनिमा सजोषा दीर्घमायुः करति जीवसे वः ॥६॥

हे मृतकका पुत्र आदि हो! तिमीहरू आफ्नो पूर्ण आयु भोग्दै बुढ्यौलीमा पुग। क्रमैसँग प्रगतिमार्गमा अघि सर। यस लोकमा उत्तम जन्म भएका त्वष्टादेवले तिमीहरूलाई यिनै मानिससित जीवन व्यतीत गर्नका लागि लामो आयु प्रदान गरुन्।

इमा नारीरविधवाः सुपत्नीराञ्जनेन सर्पिषा सं विशन्तु।
अनश्रवोऽनमीवाः सुरत्ना आ रोहन्तु जनयो योनिमग्रे ॥७॥

सौभाग्यवती र सुन्दर नारी घिउको काजलले शोभायमान भएर आआफ्ना घरभित्र पसून्। यी नारीहरू आँसु रोकेर, मानसिक विकार त्याग्दै आभूषणले सुसज्जित भएर आदरपूर्वक अघिअघि हिँड्दै घरभित्र पसून्।

उदीर्ष्व नार्यभि जीवलोकं गतासुमेतमुप शेष एहि।
हस्तग्राभस्य दिधिषोस्तवेदं पत्युर्जनित्वमभि सं बभूथ ॥८॥

हे मृतककी पत्नी! तिम्रा पतिको मृत्यु भइसकेको छ। यिनलाई छोडेर तिमी आफ्ना पुत्र आदि र घरपरिवारको विचार गर्दै उन्नति गर। तिमीले आफ्ना पतिसँग सन्तान उत्पादन आदि स्त्रीकर्तव्य निर्वाह गरिसकेकी छ्यौ। त्यसैले घर फर्क।

धनुर्हस्तादाददानो मृतस्यास्मे क्षत्राय वर्चसे बलाय।
अत्रैव त्वमिह वयं सुवीरा विश्वाः स्पृधो अभिमातीर्जयेम ॥९॥

आफ्ना प्रजाको संरक्षणका लागि आवश्यक बल र तेज हामीलाई उपलब्ध होस् भनेर म मृतकका हातबाट धनुष धारण गर्दछु। यस राष्ट्रमा हामी वीर सन्तान प्राप्त गरेर सबै अहङ्कारी शत्रुमाथि विजयी होऔं। हे मृतक तिमी यहीं निवास गर।

उप सर्प मातरं भूमिमेतामुरुव्यचसं पृथिवीं सुशेवाम्।
ऊर्णम्रदा युवतिर्दक्षिणावत एषा त्वा पातु निर्ऋतेरुपस्थात् ॥१०॥

हे मृतक! तिमी यी माताजस्ती, महिमाशाली, सर्वव्यापिनी र सुखदायिनी धर्तीमाताका काखमा विराजमान होऊ। यी धर्तीमाता ऊनझैं कोमल स्पर्श र दानी पुरुषस्त्रीजस्तै सबै ऐश्वर्यकी धनी हुन्। तिमीलाई यिनले पापकर्मका दुष्प्रभावबाट मुक्त गरुन्।

उच्छ्वञ्चस्व पृथिवि मा नि बाधथाः सूपायनास्मै भव सूपवञ्चना।
माता पुत्रं यथा सिचाभ्येनं भूम ऊर्णुहि ॥११॥

हे धर्तीमाता! मृतकलाई पीडादायक सन्तापबाट जोगाउनका लागि माथि उठाइदेऊ। यसको राम्रो स्वागत सत्कार गर्ने र सुखमा साथै रहने बनिदेऊ। हे भूमिमाता! जसरी आमाले पुत्रलाई आँचलले छोपेझैं तिमी पनि यसलाई सबै तिरबाट ढाकिराख।

उच्छ्वञ्चमाना पृथिवी सु तिष्ठतु सहस्रं मित उप हि श्रयन्ताम्।
ते गृहासो घृतश्चुतो भवन्तु विश्वाहास्मै शरणाः सन्त्वत्र ॥१२॥

यस मृतकको शरीर छोपिराख्ने धर्तीमाता उत्तम किसिमले स्थित होऊन् र हजारौं किसिमका धुलाका कणहरू यसमाथि समर्पित गरुन्। यी धर्ती घिउको स्निग्धताजस्तै आश्रय यसलाई प्रदान गर्दै सुखदायी होऊन्।

उत्ते स्तभ्नामि पृथिवीं त्वत्परीमं लोगं निदधन्मो अहं रिषम्।
एतां स्थूणां पितरो धारयन्तु तेऽत्रा यमः सादना ते मिनोतु ॥१३॥

हे अस्थि कलश! तिमीमाथि राम्रोसित पृथ्वी स्थापित गर्दछौं, यो भारी वहन गर। यसले तिमीलाई दुःख नदियोस्। तिम्रो यो अवलम्बन पितृले धारण गरुन्। यमदेवले यहाँ तिम्रा निम्ति निवासस्थल प्रदान गरुन्।

प्रतीचीने मामहनीष्वाः पर्णमिवा दधुः।
प्रतीचीं जग्रभा वाचमश्वं रशनया यथा ॥१४॥

बाणका फेदमा प्वाँख लगाएझैं असल दिनमा देवताले म सङ्कुसुक ऋषिलाई स्थापित गरेका छन्। तीव्र गतिमा कुदने अश्वको लगाम समातेझैं हाम्रो पूजनीय प्रार्थना ग्रहण गर।

[सूक्त - १९]

ऋषि - भृगुवारुणि। देवता - आपो देवता। छन्द - अनुष्टुप् गायत्री।

नि वर्तध्वं मानु गातास्मान्त्सिषक्त रेवतीः।
अग्नीषोमा पुनर्वसू अस्मे धारयतं रयिम् ॥१॥

हे गाई हो ! हामीलाई छोडेर अरूकहाँ नजाओ, फिर्ता आओ। हे धनसम्पन्न गाई हो ! हामीलाई दुध प्रदान गर्दै परिपुष्ट गराओ। हे अग्निदेव ! तिमी निरन्तर धन प्रदान गर्ने हौ। तिमी र सोमदेव मिलेर हामीलाई ऐश्वर्य सम्पदा प्रदान गर।

पुनरेना नि वर्तय पुनरेना न्या कुरु। इन्द्र एणा नि यच्छत्वग्निरेना उपाजतु ॥२॥

हे यजमान ! यी गाईलाई बारम्बार हाम्रा नजिकै ल्याइदिएर नियन्त्रणमा राख। इन्द्रदेव यिनलाई तिम्रा नियन्त्रणमा राख्न सहायक होऊन् र अग्निदेवले दुधालु बनाऊन्।

पुनरेता नि वर्तन्तामस्मिन्पुष्यन्तु गोपतौ।
इहैवाग्नेनि धारयेह तिष्ठतु या रयिः ॥३॥

गाई बारम्बार फर्किएर हामीकहाँ आऊन्। हाम्रा संरक्षणमा रहेर यी बलिया होऊन्। हे अग्निदेव ! तिमी यिनलाई हाम्रा गोठमा राखिदेऊ। यिनीहरू यहाँ रहँदै धन र ऐश्वर्यले समृद्ध गराऊन्।

यन्नियानं न्ययनं संज्ञानं यत्परायणम्।
आवर्तनं निवर्तनं यो गोपा अपि तं हुवे ॥४॥

हामी गाईगोठ, गाईको थलो, उनको उपस्थिति, गाईको निश्चित समयमा फिर्ता हुने काम, चरनमा जाने र फर्किएर आउने समय आदि स्वाभाविक क्रियाको स्तुति गर्दछौं। गाईको रक्षा गर्ने गोठालाको पनि स्तुति गर्दछौं।

य उदानड् व्ययनं य उदानट् परायणम्।
आवर्तनं निवर्तनमपि गोपा नि वर्तताम् ॥५॥

गाई चराउनेहरूमध्ये चारैतिर गाई खोज्ने, गाईसँगै रहने, गाईसँग सँगै हिँड्ने अनुभव प्राप्त गरेका सबै गोठाला गाई चराएर कुशलतापूर्वक घरमा फिर्ता आऊन्।

आ निवर्त नि वर्तय पुनर्न इन्द्र गा देहि। जीवाभिर्भुनजामहै ॥६॥

हे इन्द्रदेव ! तिमी हाम्रो सहायक बनेर गाईलाई हामीतिर प्रेरित गर। यस्ता गाई हामीलाई बारम्बार प्रदान गर। त्यसबाट हामी सुखको उपभोग गर्न पाऔं।

परि वो विश्वतो दधा ऊर्जा घृतेन पयसा।
ये देवाः के च यज्ञियास्ते रय्या सं सृजन्तु नः ॥७॥

हे देवता हो ! हामी प्रचुर अन्न सामग्री, घिउ, दुध आदि पदार्थ र हविष्यान्न समर्पित गर्दछौं। यज्ञीय सत्कर्म पूरा गर्ने देवताहरूले गाई आदि ऐश्वर्यसम्पदा प्रदान गर।

आ निवर्तन वर्तय नि निवर्तन वर्तय।
भूम्याश्चतस्रः प्रदिशस्ताभ्य एना नि वर्तय ॥८॥

हे गाई चराउने गोठाला हो ! तिमीहरू हाम्रा नजिकै गाई लिएर आओ। हे गाई हो ! तिमीहरू सबै आओ। हे गोठला हो ! गाई फिर्ता लिएर आओ। म कहाँ लिएर आऊँ ? चारै दिशाबाट गाई भेला पारेर घरमा फिर्ता ल्याऊ।

[सूक्त - २०]

ऋषि - विमद ऐन्द्र। देवता - अग्नि। छन्द - गायत्री विराट् अनुष्टुप् विराट् त्रिष्टुप्।

भद्रं नो अपि वातय मनः ॥१॥

हे अग्निदेव ! तिमी हाम्रा मनलाई श्रेष्ठ मङ्गलकारी सङ्कल्पले युक्त गराऊ।

अग्निमीडे भुजां यविष्ठं शासा मित्रं दुर्धरीतुम्।
यस्य धर्मन्त्स्वरेनीः सपर्यन्ति मातुरूधः ॥२॥

हविभक्षक, देवताहरूमा तरुणतम, महाबलिष्ठ, सबैका मित्र र अपराजेय अग्निदेवलाई हामी प्रार्थना गर्दछौं। यस यज्ञमा सबै देवता माताको दुधजस्तै आफ्ना लागि दिइएको आहुति सेवन गर्दछन्।

यमासा कृपनीडं भासाकेतुं वर्धयन्ति। भ्राजते श्रेणिदन् ॥३॥

सत्कर्मका आश्रयस्वरूप, तेजस्वी अग्निदेवलाई स्तोताहरू विभिन्न स्तोत्रले संवर्द्धित गर्दछन्। कल्याणकारी अग्निदेव स्तोत्रले विशेष रूपमा शोभायमान हुन्छन्।

अर्यो विशां गातुरेति प्र यदानड् दिवो अन्तान्। कविरभ्रं दीद्यानः ॥४॥

यजमानका आश्रयरूपी अग्निदेव प्रज्वलित भएर ऊर्ध्वगामी हुँदै दिव्यलोकसम्म व्याप्त हुन पुग्छन् र मेघमण्डललाई विद्युतरूपले प्रकाशित गरेर श्रेष्ठ पदमा राज हुन्छन्।

युपद्धव्या मानुषस्योर्ध्वस्तस्थावृभ्वा यज्ञे। मिन्वन्त्सद्म पुर एति ॥५॥

यस श्रेष्ठ यज्ञमा आहुति सेवन गर्ने अग्निदेव ज्योतिस्वरूप भएर माथि उठ्दछन्। यसै बेला उत्तर वेदी पार गरेर हाम्रा याजकहरू अगाडि उपस्थित हुन्छन्।

स हि क्षेमो हविर्यज्ञः श्रुष्टीदस्य गातुरेति। अग्निं देवा वाशीमन्तम् ॥६॥

अग्निदेव नै हव्य र आहुति ग्रहण गरेर कल्याणकारी यज्ञ सम्पन्न गर्दछन्। उनी नै देवता आह्वान गर्दछन्। देवशक्ति उनै प्रशंसनीय अग्निदेवसँग आउने गर्दछन्।

यज्ञासाहं दुव इषेऽग्निं पूर्वस्य शेवस्य। अद्रेः सूनुमायुमाहुः ॥७॥

अग्निदेवलाई ढुङ्गा घोटेर उत्पन्न गरिएका हुनाले पाषणपुत्र नामले विभूषित छन्। यज्ञ धारणकर्ता अग्निदेवलाई श्रेष्ठ सुखमय जीवन प्राप्तिका लागि श्रद्धापूर्वक अर्चना गरौं।

नरो ये के चास्मदा विश्वेत्ते वाम आ स्युः। अग्निं हविषा वर्धन्तः ॥८॥

अग्निदेवलाई आहुतिद्वारा संवर्द्धित गर्दै हाम्रा पुत्रपौत्रादि श्रेष्ठ सन्तानले सबै किसिमका श्रेष्ठतम सम्पत्ति प्राप्त गरून्। यस्तो हाम्रो मङ्गलकारी कामना छ।

कृष्णः श्वेतोऽरुषो यामो अस्य ब्रध्न ऋज्र उत शोणो यशस्वान्।
हिरण्यरूपं जनिता जजान ॥९॥

अग्निदेवको रथ कृष्णवर्ण, कान्तिमान्, तेजसम्पन्न, रातो, सहज गमनशील, तीव्रगामी र कीर्तिमान छ। स्वर्णजस्तै उज्ज्वल दीप्तिमान् त्यो रथ सृष्टिकर्ताले नै बनाएका हुन्।

एवा ते अग्ने विमदो मनीषामूर्जो नपादमृतेभिः सजोषाः।
गिर आ वक्षत्सुमतीरियान इषमूर्जं सुक्षितिं विश्वमाभाः ॥१०॥

हे अमृतस्वरूप ऐश्वर्यले सम्पन्न तेजस्वी अग्निदेव ! सद्बुद्धिको कामनाले प्रेरित विमद नामका ऋषिले तिम्रा लागि उत्तम स्तोत्र रचना गरेका छन्। हे बलवर्द्धक अग्निदेव ! तिमी प्रार्थना स्वीकार गर्दै उनका लागि सजिलो निवास, उत्तम बल र प्राप्त गर्नुपर्ने जेजति अन्न आदि उपभोग्य सामग्री हुन्छन् ती सबै प्रदान गर।

[सूक्त - २१]

**ऋषि** - विमद ऐन्द्र। **देवता** - अग्नि। **छन्द** - आस्तार पंक्ति।

आग्निं न स्ववृक्तिभिर्होतारं त्वा वृणीमहे।
यज्ञाय स्तीर्णबर्हिषे वि वो मदे शीरं पावकशोचिषं विवक्षसे ॥१॥

हामी आफैंले रचना गरेका मन्त्रले देवताहरूका आह्वान कर्ता, पावन, ज्योतिर्मय र सर्वत्र विद्यमान अग्निदेवलाई वरण गर्दछौं। कुशका आसनले सुशोभित यज्ञमा आनन्द प्राप्तिका लागि हामी उनलाई धारण गर्दछौं। उनले आफ्ना प्रदीप्त ज्वाला विमद ऋषिका लागि प्रेरित गरुन्।

त्वामु ते स्वाभुवः शुम्भन्त्यश्वराधसः।
वेति त्वामुपसेचनी वि वो मद ऋजीतिरग्न आहुतिर्विवक्षसे ॥२॥

प्रखर तेजसम्पन्न र ऐश्वर्यसम्पन्न यजमानले तिमीलाई शोभायमान गराउँछन्। हे तेजस्वी अग्निदेव ! सहज गतिले खस्न आउने आहुति तिम्रो सन्तुष्टिका लागि नजिकै जान्छन्। तिमी तिनलाई धारण गरेर संवर्द्धित हुन्छौ।

त्वे धर्माण आसते जुहूभिः सिञ्चतीरिव।
कृष्णा रूपाण्यर्जुना वि वो मदे विश्वा अधि श्रियो धिषे विवक्षसे ॥३॥

वृष्टिरूपी जलका सिंचाइले पृथ्वीको सेवा भएझैँ यज्ञधारणकर्ता ऋत्विकहरू हवनमा प्रयुक्त पात्रले तिमीलाई सेचन गर्दछन्। तिमी कालो वर्णका ज्वालायुक्त आभाले सम्पन्न भएर देवताको प्रसन्नताका लागि अत्यधिक सुशोभित हुन्छौ। हे अग्निदेव ! त्यसैले तिमी महिमामय छौ।

यमग्ने मन्यसे रयिं सहसावन्नमर्त्य।
तमा नो वाजसातये वि वो मदे यज्ञेषु चित्रमा भरा विवक्षसे ॥४॥

बलसम्पन्न, अमर, तेजस्वी हे अग्निदेव ! उत्तम र आश्चर्यजनक विधिले तिमीले स्वीकार गर्ने ऐश्वर्यलाई देवताको आनन्द, हाम्रो बल र अन्न आदि समृद्धिका लागि यज्ञमा प्रदान गर। तिमी महिमायुक्त सामर्थ्यले सम्पन्न छौ।

अग्निर्जातो अथर्वणा विदद्विश्वानि काव्या।
भुवद्दूतो विवस्वतो वि वो मदे प्रियो यमस्य काम्यो विवक्षसे ॥५॥

सबै किसिमका स्तोत्रका ज्ञाता अथर्वा ऋषिले अग्निदेवलाई प्रकट गरे। सबैको कामना पूरा गराउने अग्निदेव देवताको आह्वानका लागि सन्देशवाहकका रूपमा छन्। यिनले हर्षित भएर सुख प्रदान गरुन्। हे अग्निदेव ! तिमी महिमामय छौ।

त्वां यज्ञेष्वीडतेऽग्ने प्रयत्यध्वरे।
त्वं वसूनि काम्या वि वो मदे विश्वा दधासि दाशुषे विवक्षसे ॥६॥

हे अग्निदेव ! ऋत्विक् र यजमान यज्ञको प्रारम्भिक वेलामा तिम्रो स्तुति गर्दछन् र सबै किसिमका अभीष्ट वैभव विशिष्ट रूपले ग्रहण गर्दछन्। तिमी यजमानको आनन्द र मङ्गलका लागि दान गर्दछौ। त्यसैले महान् छौ।

त्वां यज्ञेष्वृत्विजं चारुमग्ने नि षेदिरे।
घृतप्रतीकं मनुषो वि वो मदे शुक्रं चेतिष्ठमक्षभिर्विवक्षसे ॥७॥

घिउले प्रज्वलित, तेजस्वी, ऋत्विक्सित सम्बद्ध, सामर्थ्यवान् र मेधावी हे अग्निदेव ! आनन्द प्राप्तिका लागि यजमानबाट यज्ञमा प्रतिष्ठित गरिनाले तिमी पूजनीय छौ।

अग्ने शुक्रेण शोचिषोरु प्रथयसे बृहत्।
अभिक्रन्दन्वृषायसे वि वो मदे गर्भं दधासि जामिषु विवक्षसे ॥८॥

हे महिमावान् अग्निदेव ! प्रज्वलित तेजले अत्यधिक ख्याति प्राप्त छौ। युद्धभूमिमा मदमत्त साँढे डुक्रिएझैँ ध्वनि गर्दै तिमी अति शक्तिशाली हुन्छौ। औषधिमा बीजको उत्पत्तिका कारण तिमी नै हौ। सोम आदिले आनन्द प्राप्त हुँदा महिमायुक्त हुन्छौ।

[सूक्त - २२]

ऋषि - विमद ऐन्द्र। देवता - इन्द्र। छन्द - पुरस्ताद्बृहती अनुष्टुप् त्रिष्टुप्।

कुह श्रुत इन्द्रः कस्मिन्नद्य जने मित्रो न श्रूयते।
ऋषीणां वा यः क्षये गुहा वा चर्कृषे गिरा ॥१॥

इन्द्रदेवको ख्याति आज कहाँ छ ? मित्रजस्तै हितैषि इन्द्र आज व्यक्तिमा ख्याति पाउँदै छन् ? ऋषिको आश्रम अथवा गुफामा स्तुतिद्वारा उपास्य भइरहेका इन्द्र आज कुन स्थितिमा होलान् ?

इह श्रुत इन्द्रो अस्मे अद्य स्तवे वज्र्यृचीषमः।
मित्रो न यो जनेष्वा यशश्चक्रे असाम्या ॥२॥

हाम्रा यस यज्ञमा आज इन्द्रदेव प्रमुख प्रतिनिधि हुन्। वज्रधारी र प्रशंसनीय इन्द्रदेवलाई हामी प्रार्थना गर्दछौँ। मित्रजस्तै कल्याणकारी इन्द्रदेवले कीर्तिमान् र यशस्वी बनाऊन्।

महो यस्पतिः शवसो असाम्या महो नृम्णस्य तूतुजिः।
भर्ता वज्रस्य धृष्णोः पिता पुत्रमिव प्रियम् ॥३॥

शक्तिका स्वामी इन्द्रदेव स्तोतालाई महान् वैभव प्रदान गर्दछन्। उनी शत्रुसंहारक, वज्र धारण गरेका छन्। पिताले प्रिय पुत्रको संरक्षण गरेझैँ उनले हाम्रो रक्षा गरुन्।

युजानो अश्वा वातस्य धुनी देवो देवस्य वज्रिवः ।
स्यन्ता पथा विरुक्मता सृजानः स्तोष्यध्वनः ॥४॥

हे वज्रधारी देवतास्वरूप इन्द्रदेव ! तिमी वायुभन्दा बढी गतिशील, श्रेष्ठ मार्गबाट जाने गरेका दुवै अश्व रथमा योजित गरेर मार्ग बनाउँदै सधैँ प्रशंसनीय हुन्छौ ।

त्वं त्या चिद्वातस्याश्वागा ऋज्रा त्मना वहध्यै ।
ययोर्देवो न मर्त्यो यन्ता नकिर्विदाय्यः ॥५॥

हे वायुजस्तै गमनशील इन्द्रदेव ! सोझो मार्गमा जाने अश्व आफ्ना सामर्थ्यशक्तिले गतिमान् गराउँदै तिमी हाम्रा सामु उपस्थित हुन्छौ । यी दुवै अश्वको सञ्चालनमा देवता र मानिसमध्ये कोही सक्षम छैन र यिनको सामर्थ्य कसैले पनि जान्दैन ।

अध ग्मन्तोशना पृच्छते वां कदर्था न आ गृहम् ।
आ जग्मथुः पराकाद्दिवश्च ग्मश्च मर्त्यम् ॥६॥

यज्ञ सकिएपछि इन्द्रदेव र अग्निदेव आआफ्नो धामतर्फ फर्कंदै गर्दा उशना भार्गवले तिमीहरू दुई कुन उद्देश्यले यति टाढाका यजमानकहाँ आएका हौ ? भनी सोधे ।

आ न इन्द्र पृक्षसेऽस्माकं ब्रह्मोद्यतम् ।
तत्त्वा याचामहेऽवः शुष्णं यद्धन्नमानुषम् ॥७॥

हे इन्द्रदेव ! हामीलाई सबै किसिमले संरक्षण प्रदान गर । हामीले महिमामय स्तुतिसँगै यज्ञीय हविष्यान्न तिम्रा निम्ति समर्पित गरेका छौँ । हामी उही दिव्य, श्रेष्ठ संरक्षण शक्तिको कामना गर्दछौँ । तिमीले त्यसै सामर्थ्यले शुष्ण राक्षस संहार गरेका थियौ ।

अकर्मा दस्युरभि नो अमन्तुरन्यव्रतो अमानुषः ।
त्वं तस्यामित्रहन्वधर्दासस्य दम्भय ॥८॥

हे शत्रुसङ्हारा इन्द्रदेव ! पुरुषार्थहीन, सबैको अपमान गर्ने, यज्ञ आदि सत्कर्मले रहित, असुरता भरिएका दुष्ट दस्युले हाम्रा सेनालाई सबै तिरबाट घेरेका छन्, तिमी ती सबै दस्युलाई उचित दण्ड देऊ र संहार गर ।

त्वं न इन्द्र शूर शूरैरुत त्वोतासो बर्हणा ।
पुरुत्रा ते वि पूर्तयो नवन्तक्षोणयो यथा ॥९॥

हे सामर्थ्यशाली इन्द्रदेव ! वीर मरुत्‌हरूका सहयोगले हाम्रो संरक्षण गर । तिमीबाट संरक्षित भएर हामी युद्धभूमिमा तिम्रै सामर्थ्यले शत्रु संहार गर्न सक्षम हुनेछौँ । तिम्रो रहर पूरा गराउने साधन हामीसित मनग्गे छन् । तिम्रा साधक, भक्त अधिपतिझैँ विभिन्न खालका प्रार्थनाले तिमीलाई प्रशंसित गराउँछन् ।

त्वं तान्वृत्रहत्ये चोदयो नृन्कार्पाणे शूर वज्रिवः ।
गुहा यदी कवीनां विशां नक्षत्रशवसाम् ॥१०॥

शूरवीर, वज्रधारी हे इन्द्रदेव ! तिमी मरुत्‌हरूलाई वृत्ररूपी शत्रुको संहार गर्न त्यस्ता बेलामा प्रोत्साहित गर्दछौ, जब तिमी ज्ञानी स्तोताद्वारा नक्षत्रलोकवासी देवताका लागि उच्चरित स्तोत्र सुन्दछौ ।

मक्षू ता त इन्द्र दानाप्नस आक्षाणे शूर वज्रिवः ।
यद्ध शुष्णस्य दम्भयो जातं विश्वं सयावभिः ॥११॥

वज्रधारी शूरवीर हे इन्द्रदेव ! युद्धभूमिमा तिमी तीव्र गतिले सक्रिय भइरहन्छौ । तिमीले मरुत्‌हरूका सहयोगले शुष्ण राक्षसको समूल नाश गर्‍यौ । कृपापूर्वक सहयोग गर्नु नै तिम्रो मुख्य कर्म हो ।

माकुध्र्यगिन्द्र शूर वस्वीरस्मे भूवन्नभिष्टयः ।
वयंवयं त आसां सुम्ने स्याम वज्रिवः ॥१२॥

हे वीर इन्द्रदेव ! हाम्रो अभीष्ट कामना कहिल्यै पनि सत्प्रयोजनविनाको नहोस् । हे वज्रधारी इन्द्रदेव ! तिम्रो दिव्य संरक्षणमा पल्लवित र पुष्पित भएर सधैँ सुखी रहौँ ।

अस्मे ता त इन्द्र सन्तु सत्याहिंसन्तीरुपस्पृशः।
विद्याम यासां भुजो धेनूनां न वज्रिवः ॥१३॥

हे इन्द्रदेव ! हाम्रो शुभ आकाङ्क्षाको प्रार्थना तिमीकहाँ पुगेर सत्यरूप र हिंसारहित होस्। हे वज्रधारी ! तिम्रा कृपाले हामी गाईको दुधजस्तै आशीर्वादको पुण्यफल पाऔँ।

अहस्ता यदपदी वर्धत क्षाः शचीभिर्वेद्यानाम्।
शुष्णं परि प्रदक्षिणिद्विश्वायवे नि शिश्नथः ॥१४॥

देवताप्रति समर्पित यज्ञ आदि क्रियाद्वारा यो पृथ्वी हातगोडाविहीन भए पनि अति व्यापक र समृद्ध छ। सम्पूर्ण मानिसको हितका लागि पृथ्वीलाई चारै तिरबाट परिक्रमा गरेर तिमीले शुष्ण राक्षसको वध गर्‍यौ।

पिबापिबेदिन्द्र शूर सोमं मा रिषण्यो वसवान वसुः सन्।
उत त्रायस्व गृणतो मघोनो महश्च रायो रेवतस्कृधी नः ॥१५॥

हे पराक्रमी इन्द्रदेव ! तिमी शीघ्र सोमरस पान गर। हे ऐश्वर्यशाली इन्द्रदेव ! तिमी स्वयं धनसम्पन्न छौ। हामीलाई हिंसित नगराएर संरक्षक होऊ। स्तुतिकर्ता यजमानलाई संरक्षित गर। हामी प्रचुर धनका स्वामी होऔँ, ऐश्वर्यसम्पन्न बन्ने आशीर्वाद देऊ।

[सूक्त - २३]

ऋषि - विमद ऐन्द्र वसुकृत् वासुक्र। देवता - इन्द्र। छन्द - जगती त्रिष्टुप्।

यजामह इन्द्रं वज्रदक्षिणं हरीणां रथ्यं विव्रतानाम्।
प्र श्मश्रु दोधुवदूर्ध्वथा भूद्वि सेनाभिर्दयमानो वि राधसा ॥१॥

वज्रपाणि, गतिमान् रथमा आसीन, केश एवं बाहु हल्लाएर शत्रु थर्काउने, सर्वश्रेष्ठ, सेनाका माध्यमबाट शत्रु अत्याउने इन्द्रदेवका लागि हामी आहुति प्रदान गर्दछौँ। तिनै इन्द्रदेवले उपासकलाई धनवैभव प्रदान गर्दछन्।

हरी न्वस्य या वने विदे वस्विन्द्रो मघैर्मघवा वृत्रहा भुवत्।
ऋभुर्वाज ऋभुक्षाः पत्यते शवोऽव क्ष्णौमि दासस्य नाम चित् ॥२॥

इन्द्रदेवका दुवै अश्वले यज्ञका माध्यमबाट धन आर्जन गरे, तिनबाटै प्राप्त प्रचुर धनका अधिपति भएर इन्द्रदेवले वृत्रासुर विनाश गरे। तेजस्वितायुक्त, शक्तिसम्पन्न र सहायक इन्द्रदेव बल र धनका अधिपति हुन्। हामी शत्रुसमुदायका दस्यु समूल नाश गर्ने विचारमा छौँ।

यदा वज्रं हिरण्यमिदथा रथं हरी यमस्य वहतो वि सूरिभिः।
आ तिष्ठति मघवा सनश्रुत इन्द्रो वाजस्य दीर्घश्रवसस्पतिः ॥३॥

इन्द्रदेव जब आफ्नो तेजस्वी स्वर्णिम वज्र धारण गरेर दुवै अश्व जोतिएका रथमा आरुढ हुँदा विशेष रूपले सुशोभित हुन्छन्। इन्द्रदेव सबैले जानेका उत्तम अन्न र ऐश्वर्य सम्पदाका अधीश्वर हुन्।

सो चिन्नु वृष्टिर्यूथ्या३ स्वा सचाँ इन्द्रः श्मश्रूणि हरिताभि प्रुष्णुते।
अव वेति सुक्षयं सुते मधूदिद्धूनोति वातो यथा वनम् ॥४॥

वर्षाका पानीले पशुसमूह भिजेझैँ इन्द्रदेव हरियो वर्णका सोमरसले आफ्ना दाह्रीजुँगा भिजाउँछन्। त्यसपछि उनी उत्तम यज्ञस्थलमा गएर प्रस्तुत मधुर सोमरस पान गर्दछन् र वायुले वनवृक्ष हल्लाएझैँ शत्रुलाई त्रस्त गराउँछन्।

यो वाचा विवाचो मृध्रवाचः पुरू सहस्राशिवा जघान।
तत्तदिदस्य पौंस्यं गृणीमसि पितेव यस्तविषीं वावृधे शवः ॥५॥

अनेकौँ प्रकारका उत्तेजक वाणी प्रयोग गर्ने शत्रुलाई हप्कीले शान्त गराउँदै क्रोधपूर्वक इन्द्रदेवले हजारौँ शत्रु समूल नाश गराए। पिताले अन्न आदिद्वारा पुत्रको पोषण गरेझैँ इन्द्रदेव मानिसको पोषण गर्दछन्। हामी उनै इन्द्रदेवको महिमा गुणगान गर्दछौँ।

स्तोमं त इन्द्र विमदा अजीजनन्नपूर्व्यं सुदानवे।
विद्मा ह्यस्य भोजनमिनस्य यदा पशुं न गोपाः करामहे ॥६॥

हे इन्द्रदेव ! तिमीलाई उत्तम दानी भन्ने जानेर विमद वंशीहरूले अति अनुपम स्तोत्र रचना गरे। हामी ऐश्वर्यका अधिपति इन्द्रदेवसित राम्ररी परिचित छौँ। गोठालाले गाई आदि पशु आफूतिर बोलाएझैँ हामी ऐश्वर्य प्राप्तिका लागि तिमीलाई आह्वान गर्दछौँ।

माकिर्न एना सख्या वि यौषुस्तव चेन्द्र विमदस्य च ऋषेः।
विद्मा हि ते प्रमतिं देव जामिवदस्मे तेसन्तु सख्या शिवानि ॥७॥

हे इन्द्रदेव ! तिमी र विमद ऋषिका बीचमा भएको मैत्री सम्बन्ध कसैले नछुटाओस् र सधैं स्थिर रहोस्। हे देवता ! दाजुभाइ र दिदीबहिनीको विचार मिलेझैं तिम्रो मैत्री भावयुक्त मन हामीतिर प्रेरित होस् र हाम्रो मित्रता सधैं सुदृढ बनेर रहोस्।

[सूक्त - २४]

**ऋषि** - विमद ऐन्द्र। **देवता** - इन्द्र अश्विनीकुमार। **छन्द** - आस्तार पंक्ति अनुष्टुप्।

**इन्द्र सोममिमं पिब मधुमन्तं चमू सुतम्।**
**अस्मे रयिं नि धारय वि वो मदे सहस्रिणं पुरूवसो विवक्षसे ॥१॥**

हे इन्द्रदेव ढुङ्गाले पेलेर तयार गरिएको मधुर सोमरस तयार छ, तिमी पान गर। प्रचुर धनले सम्पन्न हे इन्द्रदेव ! तिमी असङ्ख्य प्रकारका विपुल धन हामीलाई देऊ। हामी सधैं महिमामय होऔं।

**त्वां यज्ञेभिरुक्थैरुप हव्येभिरीमहे।**
**शचीपते शचीनां वि वो मदे श्रेष्ठं नो धेहि वार्यं विवक्षसे ॥२॥**

हे शचीपति इन्द्रदेव ! यज्ञीय मन्त्र, यज्ञकर्म र हवन सामग्रीले तिम्रो अर्चना गर्दछौं। सबै असल कर्मको अभीष्ट फल प्रदान गर र वास्तवमा महिमामय होऊ।

**यस्पतिर्वार्याणामसि रध्रस्य चोदिता।**
**इन्द्र स्तोतॄणामविता वि वो मदे द्विषो नः पाह्यंहसो विवक्षसे ॥३॥**

हे इन्द्रदेव ! तिमी अभीष्ट ऐश्वर्यका अधिपति, साधकलाई साधना मार्गमा प्रोत्साहित गर्ने र स्तोताहरूका पालनकर्ता हौ। शत्रुरूपी विकृति र दुष्कर्मरूपी पापबाट हामीलाई रक्षा गर। यस्ता इन्द्रदेवको महिमा प्रख्यात होस्।

**युवं शक्रा मायाविना समीची निरमन्थतम्।**
**विमदेन यदीडिता नासत्या निरमन्थतम् ॥४॥**

कर्मप्रति निष्ठावान्, समर्थशील हे अश्विनीकुमार हो ! विद्वान्हरूका परस्पर सहयोगमा तिमीहरू दुईले अरणी मन्थन गरेर अग्निदेव प्रकट गरायौ। विमद ऋषिले तिमीहरूको प्रार्थना गर्दा सत्यरूपी तिमीहरू दुवैले अग्नि प्रज्वलित गरायौ।

**विश्वे देवा अकृपन्त समीच्योर्निष्पतन्त्योः।**
**नासत्यावब्रुवन्देवाः पुनरा वहतादिति ॥५॥**

हे अश्विनीकुमार हो ! दुई अरणी काठ आपसमा घोट्दाखेरि अग्निका झिल्का बाहिर निस्कन थालेका हुँदा समस्त देवताले तिमीहरूको स्तुति गरे। सबै देवशक्तिले अश्विनीकुमारसित प्रार्थना गर्दै बारम्बार मन्थन गर भने।

**मधुमन्मे परायणं मधुमत्पुनरायनम्।**
**ता नो देवा देवतया युवं मधुमतस्कृतम् ॥६॥**

हे अश्विनीकुमार हो ! हाम्रो बाहिरी यात्रा स्नेहका भावनाले युक्त होस् र आगमन पनि त्यस्तै मधुर प्रीतियुक्त भावनाको होस्। हे देवता हो ! तिमीहरू दुवै आफ्ना दिव्य शक्तिले हामीलाई माधुर्ययुक्त प्रीतिसम्पन्न बनाओ।

[सूक्त - २५]

**ऋषि** - विमद प्राजापत्य वसुकृत् वासुक्र। **देवता** - सोम। **छन्द** - आस्तार पंक्ति।

**भद्रं नो अपि वातय मनो दक्षमुत क्रतुम्।**
**अधा ते सख्ये अन्धसो वि वो मदे रणन्गावो न यवसे विवक्षसे ॥१॥**

हे सोम ! तिमी हर्षित हुँदै हाम्रा मनलाई बल, कार्यकुशलता, कल्याणकारी शक्ति, श्रेष्ठता र मित्रता प्राप्त गर्न प्रेरित गर। गाईको मित्रता हरियो घाँसमा भएझैं हामीलाई तिम्रो मित्रता प्राप्त होस्।

**हृदिस्पृशस्त आसते विश्वेषु सोम धामसु।**
**अधा कामा इमे मम वि वो मदे तिष्ठते वसूयवो विवक्षसे ॥२॥**

हे सोम ! हृदय हर्षित गराउने तिम्रो प्रार्थना गरेर स्तोताहरू चारैतिर विराजमान हुन्छन्। यस्तो धन प्राप्त गर्नका लागि हाम्रो मन विभिन्न कामनाले सम्पन्न हुन्छ। वास्तवमा तिम्रो महिमा अपार छ।

उत व्रतानि सोम ते प्राहं मिनामि पाक्या।
अधा पितेव सूनवे वि वो मदे मृडा नो अभि चिद्वधाद्विवक्षसे ॥३॥

हे सोमदेव ! हामी आफ्ना श्रेष्ठ बुद्धिले तिम्रा कर्मको गति जान्दछौं। तिमी प्रसन्नचित्त भएर हाम्रा शत्रु संहार गराऊ र संरक्षित गर। पिताले पुत्रको संरक्षण गरेझैं हाम्रो पालनपोषण गरेर सुखसौभाग्य प्रदान गर। वास्तवमा तिम्रो कीर्ति महान् छ।

समु प्र यन्ति धीतयः सर्गासोऽवताँ इव।
क्रतुं नः सोम जीवसे वि वो मदे धारया चमसाँ इव विवक्षसे ॥४॥

हे सोम ! पानी झिक्नका लागि कलश कुवामा गएझैं हाम्रो प्रार्थना तिमीलाई प्राप्त हुन्छ। हाम्रो जीवन रक्षाका लागि यस यज्ञकर्म सफल बनाइदेऊ। तिम्रो प्रसन्नताका लागि हामी सोमरस पिउने भाँडो समर्पित गर्दछौं। वास्तवमा तिमी महिमायुक्त छौ।

तव त्ये सोम शक्तिभिर्निकामासो व्यृण्विरे।
गृत्सस्य धीरास्तवसो वि वो मदे व्रजं गोमन्तमश्विनं विवक्षसे ॥५॥

हे सोमदेव ! विभिन्न फलको आशा भएका, दानशील, विद्वान्, अनेकौं किसिमका कर्म निर्वाह गर्ने ऋत्विक्हरू तिम्रो प्रार्थना गर्दछन्। तिमी प्रशंसित भएर गाई र अश्वले सम्पन्न पशुशाला प्रदान गर। वास्तवमा तिमी महान् र ज्ञानले सम्पन्न छौ।

पशुं नः सोम रक्षसि पुरुत्रा विष्ठितं जगत्।
समाकृणोषि जीवसे वि वो मदे विश्वा सम्पश्यन्भुवना विवक्षसे ॥६॥

हे सोमदेव ! तिमी विभिन्न रूपमा रहेर पशुले युक्त हाम्रा घरको र संसारको संरक्षण गर्दछौ। तिमी नै सम्पूर्ण लोकको अनुसन्धान गरेर हाम्रा प्राणको रक्षा गर्न जीवनमा उपायोगी सबै पदार्थले पोषण, गर्दछौ। सबैका आनन्ददायक तिमी महान् छौ।

त्वं नः सोम विश्वतो गोपा अदाभ्यो भव।
सेध राजन्नप स्रिधो वि वो मद मा नो दुःशंस ईशता विवक्षसे ॥७॥

हे अविनाशी, अमृतस्वरूप सोमदेव ! सबै किसिमले हाम्रो संरक्षक बन। हे राजाजस्तो स्वरूप भएका सोमदेव ! हाम्रा शत्रु रोकिदेऊ र निन्दक दुष्कृत्यमा सफल नहोऊन्। तिमी महिमाशाली छौ।

त्वं नः सोम सुक्रतुर्वयोधेयाय जागृहि।
क्षेत्रवित्तरो मनुषो वि वो मदे द्रुहो नः पाह्यंहसो विवक्षसे ॥८॥

हे श्रेष्ठकर्मा सोम ! अन्न प्रदान गर्नका लागि सधैं हामीलाई जागरुक राख। आश्रय प्रदान गर्नका लागि तिमी सुप्रसिद्ध छौ। तिमी विद्रोही मानिस र पापकर्मबाट हामीलाई रक्षा गर। वास्तवमा तिम्रो कीर्ति महान् छ।

त्वं नो वृत्रहन्तमेन्द्रस्येन्दो शिवः सखा।
यत्सीं हवन्ते समिथे वि वो मदे युध्यमानास्तोकसातौ विवक्षसे ॥९॥

हे वृत्रहन्ता सोमदेव ! प्रजालाई युद्धभूमिमा प्रेरित गर्ने शत्रुपक्षका योद्धाले हाँक दिंदा इन्द्रदेवका कल्याणकारी सहयोगी बनेका तिमी हाम्रा लागि पनि सहायक हुन्छौ। वास्तवमा तिम्रो कीर्ति महान् छ।

अयं घ स तुरो मद इन्द्रस्य वर्धत प्रियः।
अयं कक्षीवतो महो वि वो मदे मतिं विप्रस्य वर्धयद्विवक्षसे ॥१०॥

निश्चित रूपमा नै सोमरस शीघ्र क्रियाशील, आनन्दवर्द्धक, बलप्रदायक र इन्द्रदेवका लागि प्रीतियुक्त भएर संवर्द्धित हुन्छ। त्यसले नै महाज्ञानी ऋषि कक्षीवान्को बुद्धि तेजिलो बनाएको थियो। वास्तवमा नै सोमदेव महिमाशाली छन्।

अयं विप्राय दाशुषे वाजाँ इयर्ति गोमतः।
अयं सप्तभ्य आ वरं वि वो मदे प्रान्धं श्रोणं च तारिषद्विवक्षसे ॥११॥

सोमदेव दानी र ज्ञानसम्पन्न यजमानलाई पशुले युक्त अन्न र उपभोग्य सामग्री प्रदान गर्दछन्। यसैले सात खालका होतालाई जीवनमा उपयोगी धनसम्पदा प्रदान गर्दछ। यिनैले नेत्रहीन दीर्घतमा ऋषिलाई नेत्र र पङ्गु परावृज ऋषिलाई गोडा प्रदान गर्ने कृपा गरेका थिए। वास्तवमा सोमदेवको महिमा अनन्त छ।

[सूक्त - २६]

ऋषि - विमद प्राजापत्य वसुकृत् वासुक्र। देवता - पूषा। छन्द - अनुष्टुप् उष्णिक्।

**प्र ह्यच्छा मनीषाः स्पार्हा यन्ति नियुतः।**
**प्र दस्रा नियुद्रथः पूषा अविष्टु माहिनः ॥१॥**

अत्यन्त प्रशंसनीय, स्नेहभावले प्रेरित स्तोत्र पूषादेवका लागि समर्पित गर्दछौं। उनी सधैं रथमा अश्व जोडेर आउँछन्। महान् पूषादेवले यजमानका दम्पतीको रक्षा गरुन्।

**यस्य त्यन्महित्वं वाताप्यमयं जनः। विप्र आ वंसद्धीतिभिश्चिकेत सुष्टुतीनां ॥**

ज्ञानी मानिसले पूषादेवका जीवनशक्तिप्रदायक जलराशिको महिमायुक्त शक्ति आफ्ना प्रार्थनाले जल वर्षाका रूपमा उपयोगी बनाउँछ। पूषादेव ध्यानमग्न भएर यजमानको प्रार्थना सुन्दछन्।

**स वेद सुष्टुतीनामिन्दुर्न पूषा वृषा।**
**अभि प्सुरः प्रुषायति व्रजं न आ प्रुषायति ॥३॥**

सोमदेवझैं पूषादेव पनि अभीष्ट कामना पूरा गराउने र असल स्तोत्र जान्नेसुन्ने गर्दछन्। सौन्दर्यले युक्त पूषादेव कृपापूर्वक जलको वर्षा गराउँछन् र हाम्रा गोठमा पनि जलले सेचन गर्दछन्।

**मंसीमहि त्वा वयमस्माकं देव पूषन्। मतीनां च साधनं विप्राणां चाधवम् ॥४**

हे सबैका पोषक पूषादेव ! तिमीलाई हामी असल विचारका प्रेरक र ज्ञानी मानिसका आश्रय भन्ने मानेर अर्चना गर्दछौं।

**प्रत्यर्धिर्यज्ञानामश्वहयो रथानाम्।**
**ऋषिः स यो मनुर्हितो विप्रस्य यावयत्सखः ॥५॥**

यज्ञको आधा भाग पूषादेवले ग्रहण गर्दछन्। उनी आफ्ना रथमा घोडा नारेर यात्रा गर्छन् र सर्वद्रष्टा, मानिसका हितैषि, मेधावीका मित्र तथा तिनीहरूका शत्रुविनाशक हुन्।

**आधीषमाणायाः पतिः शुचायाश्च शुचस्य च।**
**वासोवायोऽवीनामा वासांसि मर्मृजत् ॥६॥**

सबै धारणशक्तिले सम्पन्न र तेजस्वी पूषादेव भालेपोथी पशुका अधिपति हुन्। उनी भेडाका ऊनबाट वस्त्र निर्माण गरेझैं पवित्र बनाउँछन्।

**इनो वाजानां पतिरिनः पुष्टीनां सखा।**
**प्र श्मश्रु हर्यतो दूधोद्वि वृथा यो अदाभ्यः ॥७॥**

पूषादेव सबै हविष्य पदार्थ र अन्नका अधिपति, सबैका पोषक र मित्ररूप हुन्। उत्तम र तेजस्वी पूषादेव आफ्ना कर्ममा आफ्नै केश हल्लाउँदै जान्छन्।

**आ ते रथस्य पूषन्नजा धुरं ववृत्युः।**
**विश्वस्यार्थिनः सखा सनोजा अनपच्युतः ॥८॥**

हे पूषादेव ! तिमी सबै जिज्ञासुका कामना पूरा गराउने मित्रजस्तै छौ। अत्यन्त पुराना जमानामा उत्पन्न भएका तिमी अविनाशी छौ। तिम्रा रथको धुरा बाख्राले तान्दछन्।

**अस्माकमूर्जा रथं पूषा अविष्टु माहिनः भुवद्वाजानां वृध इमं नः शृणवद्धवम् ॥**

महिमाशाली पूषादेव आफ्ना सामर्थ्यले हाम्रा रथको संरक्षण गरुन्, अन्न संवर्द्धित गरुन् र हाम्रा निवेदनको अभिप्राय बुझून्।

[सूक्त - २७]

ऋषि - वसुक्र ऐन्द्र। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**असत्सु मे जरितः साभिवेगो यत्सुन्वते यजमानाय शिक्षम्।**
**अनाशीर्दामहमस्मि प्रहन्ता सत्यध्वृतं वृजिनायन्तमाभुम् ॥१॥**

हे स्तोता हो ! मद्वारा सोमयागको अनुष्ठान गराइएका साधकलाई अभीष्ट फल प्राप्त होस् भन्ने मेरो सत्प्रयास सधैं रहन्छ। जो यज्ञीय कर्मबाट रहित, सत्य जीवनबाट विहीन भएर चारैतिर दुष्ट र दुष्कर्मीजस्तो भई घुम्दछन्, तिनीहरूको समूल नाश गरिदिन्छु।

**यदीदहं युधये संनयान्यदेवयून्तन्वा३ शूशुजानान्।**
**अमा ते तुम्रं वृषभं पचानि तीव्रं सुतं पञ्चदशं नि षिञ्चम् ॥२॥**

हे इन्द्र ! म देवोपासनाले रहित र शारीरिक सामर्थ्यले अभिमानी मानिससित सङ्घर्ष गर्नका लागि जाँदा तिमीलाई हव्यले सन्तुष्ट गर्दछु र पन्ध्रै तिथिमा सोम समर्पित गर्दछु।

नाहं तं वेद य इति ब्रवीत्यदेवयून्त्समरणे जघन्वान्।
यदावाख्यत्समरणमृघावदादिद्ध मे वृषभा प्र ब्रुवन्ति ॥३॥

मलाई देवद्वेषीको हत्यारा नभन्ने व्यक्तिलाई म चिन्दिनं। सङ्ग्राममा गएर हिंस्रक शत्रु मैले संहार गर्दा सबैले वीरतापूर्ण कर्मको गुणगान गर्दछन्।

यदज्ञातेषु वृजनेष्वासं विश्वे सतो मघवानो म आसन्।
जिनामि वेत्क्षेम आ सन्तमाभुं प्र तं क्षिणां पर्वते पादगृह्य ॥४॥

म युद्धका मैदानमा पुग्दा सबै सन्तऋषिले मलाई चारैतिरबाट घेर्दछन्। समस्त संसारको मङ्गल र संरक्षणका लागि सबैतिर विस्तृत रूपमा फैलिएका शत्रुलाई खुट्टा समातेर ढुङ्गामा पछार्दै म नै संहार गर्दछु।

न वा उ मां वृजने वारयन्ते न पर्वतासो यदहं मनस्ये।
मम स्वनात्कृधुकर्णो भयात एवेदनु द्यून्किरणः समेजात् ॥५॥

मलाई युद्धमा पराजित गर्ने सामर्थ्य कसैसित छैन। मैले चाहेँ भने विशाल पर्वत पनि मेरा काममा बाधक हुन सक्नेछैनन्। मैले थर्काएपछि बहिरो व्यक्ति पनि भयभीत हुन्छ, किरणका स्वामी सूर्यदेव पनि प्रतिदिन काँप्दछन्।

दर्शन्न्वत्र शृतपाँ अनिन्द्रान्बाहुक्षदः शरवे पत्यमानान्।
घृषुं वा ये निनिदुः सखायमध्यू न्वेषु पवयो ववृत्युः ॥६॥

मेरो अनुशासन नमान्ने, देवताको पेय सोम स्वेच्छापूर्वक पिउने, हविष्य पदार्थ स्वयं उपभोग गर्ने र हिंसाका लागि पाखुरा सुर्कने व्यक्ति मेरा दृष्टिबाट बाहिर हुँदैन। म त्यस्तालाई राम्ररी चिन्दछु। आफ्ना मित्रको निन्दा गर्न नछोड्नेमाथि मेरो प्रहार वज्रन्छ।

अभूर्वौक्षीर्व्युऽ आयुरानड् दर्षन्नु पूर्वो अपरो नु दर्षत्।
द्वे पवस्ते परि तं न भूतो योअस्य पारे रजसो विवेष ॥७॥

हे दीर्घजीवी इन्द्रदेव ! तिमीले प्रकट भएर दर्शनको लाभ दियौ र जलको वर्षाले सेचन गरायौ। उहिलेदेखि आजसम्म तिमी शत्रुको हनन गर्दै आएका छौ। यस संसारका अतिरिक्त अर्को लोकमा पनि व्याप्त रहने हुँदा द्युलोकले पनि तिम्रो मापन गर्न सक्दैन।

गावो यवं प्रयुता अर्यो अक्षन्ता अपश्यं सहगोपाश्चरन्तीः।
हवा इदर्यो अभितः समायन्कियदासु स्वपतिश्छन्दयाते ॥८॥

अनेकौँ गाई एकत्र भएर जौ आदिको घाँस खाँदै छन्। स्वामीको जस्तै म गाईको पनि सेवाचाकर गर्दछु। गोठालासित गएर गाईले घाँस चरेको हेर्छु। बोलाउँदाखेरि ती गाई आफ्ना पालनकर्ताका वरिपरि जम्मा हुन्छन्। धनीले तिनको दुध मनग्गे दुहेको छ।

सं यद्वयं यवसादो जनानामहं यवाद उर्वज्रे अन्तः।
अत्रा युक्तोऽवसातारमिच्छादथो अयुक्तं युनजद्ववन्वान् ॥९॥

विस्तृत संसारमा अन्न, जौ र कन्दमूलमा जीवन निर्वाह गर्ने ऋषि हामी नै हौँ। संसारमा मानिसले एकाग्र चित्त भएर ईश्वरको उपासना गर्दै शक्तिको कामना गरुन्। योगरहित र भौतिकवादी मानिसलाई पनि उनै इन्द्रदेल सन्मार्गतर्फ प्रेरित गर्दछन्।

अत्रेदु मे मंससे सत्यमुक्तं द्विपाच्च यच्चतुष्पात्संसृजानि।
स्त्रीभिर्यो अत्र वृषणं पृतन्यादयुद्धो अस्य वि भजानि वेदः ॥१०॥

मेरा विषयमा यहाँ जेजस्ता कुराहरू गरिएका छन्, ती सबै यथार्थ हुन्। हरेक मानिसले यसमा विश्वास गर्नुपर्दछ। दुईखुट्टे मानिस र पक्षी वा चारखुट्टे पशु जति सबैको जन्मदाता मै हुँ। संसारमा जुन पुरुष आफ्ना शूरवीरलाई स्त्रीका लागि सङ्घर्ष गर्न प्रेरित गर्दछन्, विनायुद्ध नै त्यस्ता दुष्कर्मीको धन खोसेर म सज्जनलाई प्रदान गर्दछु।

यस्यानक्षा दुहिता जात्वास कस्तां विद्वाँ अभि मन्याते अन्धाम्।
कतरो मेनिं प्रति तं मुचाते य ईं वहाते य ईं वा वरेयात् ॥११॥

आँखा आदि इन्द्रियले रहित कन्यालाई कुन विद्वानले आश्रय देला ? त्यस्ती कन्या वरण गरेर धारण गर्नेको वज्रजस्तो बल कसले रोक्न सक्दछ ?

कियती योषा मर्यतो वधूयोः परिप्रीतापन्यसा वार्येण।
भद्रा वधूर्भवति यत्सुपेशाः स्वयं सा मित्रं वनुते जने चित् ॥१२॥

कँयौं स्त्री वधुको कामना गर्ने पुरुषको प्रशंसक वचन र उसका धनसम्पत्तिलाई नै पति वरण गर्ने माध्यमका रूपमा मात्रै गर्दछन्। सुशील, स्वस्थ र श्रेष्ठ मानसिक भावनाले युक्त स्त्रीहरू आफ्नो इच्छाअनुसार मित्र पुरुषलाई पतिका रूपमा स्वीकार गर्दछन्।

पत्तो जगार प्रत्यञ्चमत्ति शीर्ष्णा शिरः प्रति दधौ वरूथम्।
आसीन ऊर्ध्वामुपसि क्षिणाति न्यङ्ङुत्तानामन्वेति भूमिम् ॥१३॥

आदित्यदेव आफ्ना किरणले प्रकाश फैलाउँछन् र आफ्ना मण्डलमा विद्यमान प्रकाश स्वयंभित्र समाहित गर्दछन्। उनी आफूलाई घेरिराख्ने किरणलाई सांसारिक मानिसका शिरमा पारिदिन्छन्। माथि रहे पनि तल रहने विस्तृत पृथ्वीमा किरणले संव्याप्त छन्।

बृहन्नच्छायो अपलाशो अर्वा तस्थौ माता विषितो अत्ति गर्भः।
अन्यस्या वत्सं रिहती मिमाय कया भुवा नि दधे धेनुरूधः ॥१४॥

महान् मृत्युरूपी सूर्य अन्धकाररहित, भोगरहित, गतिशील नै भइरहन्छन्। माताबाट छुट्टिएर गर्भपोषक यज्ञरूपी महाकाशबाट निस्केको प्रवाह सेवन गर्दछन्। गाइरूपी प्रकृतिले आफूभन्दा भिन्न रहेको अव्यक्त प्रकृतिलाई बाछाका रूपमा स्नेह प्रदान गर्छ। माथि कतैतिर यस गाइका थुन छन्।

सप्त वीरासो अधरादुदायन्नष्टोत्तरात्तात् समजग्मिरन्ते।
नव पश्चातात्स्थिविमन्त आयन्दश प्राक्सानु वि तिरन्त्यश्नः ॥१५॥

प्रजापतिका नाभीबाट सात वीर उत्पन्न भए। त्यसपछि भागबाट अरू आठ वटा उत्पन्न भएर एकै साथमा सङ्गत भए। पछिल्ला भागबाट नौ वटा निस्किए र अघिल्लो भागबाट दस वटाको उत्पत्ति भयो। यी सबैले भोजन गर्दै द्युलोकबाट उत्पन्न क्षेत्रलाई बढाउन थाले।

दशानामेकं कपिलं समानं तं हिन्वन्ति क्रतवे पार्याय।
गर्भं माता सुधितं वक्षणास्ववेनन्तं तुषयन्ती बिभर्ति ॥१६॥

दस अङ्गिरामध्ये एक सर्वसित समानताको भाव राख्ने कपिल ऋषि हुन्। उनलाई उच्च पदमा प्रतिष्ठित गर्ने उत्कृष्ट यज्ञ आदि सत्कर्मको साधनाका लागि प्रेरित गर्छन्। विश्वको निर्माण गर्ने प्रकृतिरूपी माता इच्छाशक्तिले प्रेरित भएर त्यो गर्भ मानौं सुखका साथ जलमा स्थापित गर्दछिन्।

पीवानं मेषमपचन्त वीरा न्युप्ता अक्ष अनु दीव आसन्।
द्वा धनुं बृहतीमप्स्वन्तः पवित्रवन्ता चरतः पुनन्ता ॥१७॥

वीर अङ्गिराले बलशाली मेष परिपक्व गरे। खालमा खेल्नका लागि पासा फ्याँके। दुई वटा बलशाली धनुष लिएर बृहत् मूल तत्त्वका रूपमा रहेका जलभित्र विचरण गर्न लागे र पवित्रता सञ्चार गर्न थाले।

वि क्रोशनासो विष्वञ्च आयन्पचाति नेमो नहि पक्षदर्धः।
अयं मे देवः सविता तदाह द्रवन्न इद्वनवत्सर्पिरन्नः ॥१८॥

शब्दले स्तुति गर्ने विभिन्न मार्गका अनुयायी अङ्गिरा आदि यस लोकमा आउँछन्। उनीमध्ये एक वर्गका पकाउने गर्दछन्। आधाजसोले पकाउँदैनन् भन्ने तथ्य हामीलाई सवितादेवले भने। काठ र घिउ सेवन गर्नेले पनि पकाउँछन्।

अपश्यं ग्रामं वहमानमारादचक्रया स्वधया वर्तमानम्।
सिषक्त्यर्यः प्र युगा जनानां सद्यः शिश्ना प्रमिनानो नवीयान् ॥१९॥

भगवान्को स्वयं चलायमान् संसारको प्रकृतिले अनादि कालदेखि नै प्रवाहमान रूपमा यस प्राणी समुदायलाई वहन गरिरहेको छ। त्यसलाई हामीले देखिरहेका छौं। ती नयाँ उत्साहले युक्त स्वामीले सधैं दुःख नाश गर्दै जीवको जोडी उत्पन्न गर्दछन् र आपसमा भेट गराउँछन्।

एतौ मे गावौ प्रमरस्य युक्तौ मो षु प्र सेधीर्मुहुरिन्ममन्धि।
आपश्चिदस्य वि नशन्त्यर्थं सूरश्च मर्क उपरो बभूवान् ॥२०॥

हे परमेश्वर ! प्राणरक्षक हाम्रा जुन यी दुई प्राण छन्, अपान शरीररूपी रथमा नाँधिएका दुई गोरुजस्तै छन्, तिनलाई तिमी यस शरीरबाट कहिल्यै पनि पृथक् नगराऊ, बरु बारम्बार जोडिदेऊ।

यस जीवलाई सूक्ष्म प्राणले लक्ष्यसम्म पुऱ्याउँछ। परमेश्वर सूर्य विश्वको शोधन गर्ने र मेघले भरिँ पदार्थ प्रदान गर्ने गर्दछन्।

**अयं यो वज्रः पुरुधा विवृत्तोऽवः सूर्यस्य बृहतः पुरीषात्।**
**श्रव इदेना परोअन्यदस्ति तदव्यथी जरिमाणस्तरन्ति ॥२१॥**

दुःख निवारण गर्ने, जीवहरूलाई धारण गर्ने, विभिन्न प्रकारले व्याप्त यी सूर्यर्क जस्तो सर्वत्र सञ्चालक महिमाका स्वामीको ऐश्वर्य हामीलाई प्राप्त होस। यस लोकमा प्रत्यक्ष ऐश्वर्यले उत्कृष्ट अर्को पनि श्रवणीय परम ऐश्वर्य छ, त्यसलाई बाधाबन्धन विना नै उच्छेद गर्ने ईश्वरका उपासकले प्राप्त गर्दछन्।

**वृक्षेवृक्षे नियता मीमयद्गौस्ततो वयः प्र पतान् पूरुषादः।**
**अथेदं विश्वं भुवनं भयात इन्द्राय सुन्वदृषये च शिक्षत् ॥२२॥**

वृक्षसित सम्बन्धित गाई शब्द निकाल्छ। त्यस बेला असुर नष्ट गर्ने वयरूपी बाण छुट्छ। यसबाट विश्व भयभीत भएर इन्द्रदेवको स्तुति गर्दछ। ऋषिले शिक्षा प्रदान गर्दछन्।

**देवानां माने प्रथमा अतिष्ठन्कृन्तत्रादेषामुपरा उदायन्।**
**त्रयस्तपन्ति पृथिवीमनूपा द्वा बृबूकं वहतः पुरीषम् ॥२३॥**

देवताको सिर्जना कालमा सर्वप्रथम मेघ उत्पन्न भयो। मेघ छिन्नभिन्न हुँदा जल उत्पन्न भयो। तीन गुण उत्पन्न गराउने पर्जन्य, वायु र सूर्य यी तीनले नै अनुकूल स्थितिमा पृथ्वी तताउँछन्। यिनीहरूमध्ये वायु र सूर्य यी दुवै जल धारण गर्दछन्।

**सा ते जीवातुरुत तस्य विद्धि मा स्मैतादृगप गूहः समर्ये।**
**आविः स्वः कृणुते गूहते बुसं स पादुरस्य निर्णिजो न मुच्यते ॥२४॥**

हे ऋषि ! सूर्यदेव तिम्रा प्राणका आधारशक्ति हुन् र तिमी यिनका स्वरूपको राम्रो ज्ञाता हौ। यज्ञका समयमा यस्तो प्राणदयक स्वरूप नलुकाएर तिमी उनका प्रभावको बयान गर। सूर्यदेव तीनै लोक प्रकाशित गराउँछन्। उनी जलशोषण र गतिशीलताको प्रक्रिया कहिल्यै त्याग्दैनन्।

## [सूक्त - २८]

**ऋषि** – इन्द्रस्नुषा वसुक्र पत्नी। **देवता** – वसुक्र ऐन्द्र इन्द्र। **छन्द** – त्रिष्टुप्।

**विश्वो ह्यन्यो अरिराजगाम ममेदह श्वशुरो ना जगाम।**
**जक्षीयाद्धाना उत सोमं पपीयात्स्वाशितः पुनरस्तं जगायात् ॥१॥**

इन्द्रदेवबाहेक अरू सबै देवता हाम्रा यज्ञमा आएका छन्। मेरा ससुरा इन्द्रदेव मात्रै आएनन्। यदि उनी आउँदा हुन् त, भुटेका जौसँग सोमपान गर्दै र आहार आदिले सन्तुष्ट भएपछि मात्रै आफ्ना घरतिर फर्केर जाँदा हुन्।

**स रोरुवद्वृषभस्तिग्मशृङ्गो वर्ष्मन्तस्थौ वरिमन्ना पृथिव्याः।**
**विश्वेष्वेनं वृजनेषु पामि यो मे कुक्षी सुतसोमः पृणाति ॥२॥**

हे पुत्रवधू ! अभीष्ट फल प्रदान गर्ने तेजस्वी म हुँ र पृथ्वीका व्यापक र उच्च स्थानमा बास गर्दछु। सोम पेल्ने जसले मलाई सोमपानमा सन्तुष्ट गराउँछन्, म उनीहरूलाई सबै किसिमले सुरक्षा गर्दछु।

**अद्रिणा ते मन्दिन इन्द्र तूयान्त्सुन्वन्ति सोमान्पिबसि त्वमेषाम्।**
**पचन्ति ते वृषभाँ अत्सि तेषां पृक्षेण यन्मघवन्हूयमानः ॥३॥**

हे इन्द्रदेव ! तिम्रा लागि ढुङ्गाका चोइटामा चाँडै नै पेलेर आनन्दप्रद सोम यजमानले तयार गरेर उनीहरूले दिएको सोमरस तिमी पान गर्दछौ। हे ऐश्वर्यसम्पन्न इन्द्रदेव ! सत्कारपूर्वक हविष्यान्नको यज्ञ गर्दा साधकहरू वृषभजस्तै शक्तिशाली हविष्यान्न पकाउँछन् र तिमी त्यो सेवन गर्दछौ।

**इदं सु मे जरितरा चिकिद्धि प्रतीपं शापं नद्यो वहन्ति।**
**लोपाशः सिंहं प्रत्यञ्चमत्साः क्रोष्टा वराहं निरतक्त कक्षात् ॥४॥**

हे शत्रुसंहारक, शूरवीर, वृहहन्ता इन्द्रदेव ! तिम्रा अनुग्रहले हामीभित्र इच्छा गर्नासाथ उल्टो दिशातिर नदीको जल प्रवाहित गर्ने, घाँस खाने हरिणले अगाडि आएका सिंहलाई लखेट्दै पछि लाग्ने र स्यालले बँदेललाई बाक्लो जङ्गलबाट भाग्नका लागि बाध्य गराउने खालको सामर्थ्य छ।

**कथा त एतदहमा चिकेतं गृत्सस्य पाकस्तवसो मनीषाम्।**
**त्वं नो विद्वाँ ऋतुथा वि वोचो यमर्धं ते मघवन्क्षेम्या धूः ॥५॥**

हे इन्द्रदेव ! तिमी ज्ञानवान्, सामर्थ्यवान् र प्राचीन हौ। हामी अल्पज्ञ मानिस तिम्रो भक्ति गर्नमा सामर्थ्यहीन छौं। तिमी सर्वज्ञाता हौ, त्यसैले आवश्यक परेका समयमा हामीलाई विशेष मार्गदर्शन गराइराख। हे वैभवशाली इन्द्रदेव ! तिम्रा जुन अंशलाई हामी स्तोत्र बनाउन समर्थ छौं, त्यसलाई तिमी स्वीकार गर।

**एवा हि मां तवसं वर्धयन्ति दिवश्चिन्मे बृहत उत्तरा धूः।**
**पुरू सहस्रा नि शिशामि साकमशत्रुं हि मा जनिता जजान ॥६॥**

मसँग स्वर्गभन्दा पनि अति श्रेष्ठ कार्य निर्वाह गर्ने धारण सामर्थ्य छ, मबाट असङ्ख्य शत्रु एकै पटक संहार हुन्छन् र सृष्टिको सिर्जना गर्ने प्रजापतिले मलाई अजातशत्रुका रूपमा उत्पन्न गरेका छन् भनेर स्तोताहरू मेरा प्राचीन महिमाको प्रशंसा गर्दछन्।

**एवा हि मां तवसं जज्ञुरुग्रं कर्मन्कर्मन्वृषणमिन्द्र देवाः।**
**वधीं वृत्रं वज्रेण मन्दसानोऽप व्रजं महिना दाशुषे वम् ॥७॥**

मैले आनन्दित भएर वज्र नामका अस्त्रले वृत्रासुरको संहार गरें र आफ्ना सामर्थ्यले दानीलाई वैभव प्रदान गरें। त्यसैले देवशक्ति पनि मलाई तिमीजस्तै प्राचीन महिमाले युक्त, प्रत्येक कर्ममा कुशल, शक्तिशाली र अभीष्ट फल प्रदान गर्ने मान्दछन्।

**देवास आयन्परशूँरबिभ्रन्वना वृश्चन्तो अभि विड्भिरायन्।**
**नि सुद्रवं दधतो वक्षणासु यत्रा कृपीटमनु तद्दहन्ति ॥८॥**

हातमा परशु धारण गर्ने, विजयका इच्छुक देवता आउँछन् र अरूका सहयोगले बादल च्यातेर जलवर्षा गराउँछन्। उत्तम जल नदीमा प्रवाहित हुन्छ। देवताहरू जुन मेघमा जलको सम्भावना देख्छन्, उसैलाई विद्युत्ले विदीर्ण गरेर जल वर्षा गर्दछन्।

**शशः क्षुरं प्रत्यञ्चं जगाराद्रिं लोगेन व्यभेदमारात्।**
**बृहन्तं चिदृहते रन्धयानि वयद्वत्सो वृषभं शूशुवानः ॥९॥**

इन्द्रदेवका इच्छाले हरिण पनि अगाडि आउने सिंहसित जुध्छन्, हामी उसै इच्छाले परैबाट ढुङ्गा हानेर पर्वत भत्काइदिन्छौं, इन्द्रदेवका इच्छाले बाछो पनि साँढेसित जुध्छ र ठूलाबडा पनि सानातिनाका नियन्त्रणमा आउँछन्।

**सुपर्ण इत्था नखमा सिषायावरुद्धः परिपदं न सिंहः।**
**निरुद्धश्चिन्महिषस्तर्ष्यावान्गोधा तस्मा अयथं कर्षदेतत् ॥१०॥**

खोरमा थुनिएको सिंहले आफ्नो ठाउँ छोड्न नपाए पनि प्रहार गर्ने नङ्ग्रा सधैं तिखारेझैं बाज पक्षी पनि नङ्ग्रा घोटिरहन्छ। बाँधिएको राँगो तिर्खाले हुरुक्क भएझैं तिर्खाएका इन्द्रदेवलाई गोधाले सन्तुष्ट गराउँछ।

**तेभ्यो गोधा अयथं कर्षदेतद्ये ब्रह्मणः प्रतिपीयन्त्यन्नैः।**
**सिम उक्ष्णोऽवसृष्टाँ अदन्ति स्वयं बलानि तन्वः शृणानाः ॥११॥**

अन्नले सन्तुष्ट भएका ब्रह्मनिष्ठले शत्रुरूपी मनोविकार हटाउँछन्। ती ब्रह्मवादीका लागि गायत्रीले सजिलै अमृतरूपी सोम उपलब्ध गराउँछिन्। सबै किसिमका रसले युक्त अमृतस्वरूप सोम पान गरेर उनीहरू आफैंले आफ्ना शरीरभित्र रहेका विकाररूपी शत्रुलाई आफ्नै सामर्थ्यले नष्ट गर्दछन्।

**एते शमीभिः सुशमी अभूवन्ये हिन्विरे तन्वः सोम उक्थैः।**
**नृवद्वदन्नुप नो माहि वाजान्दिवि श्रवो दधिषे नाम वीरः ॥१२॥**

सोमयागमा स्तोत्ररूपी वाणीले शारीरिक पोषण गर्दै श्रेष्ठ कर्म निर्वाह गर्ने सत्कर्मीहरू आफैंलाई कृतार्थ गराउँछन्। स्पष्टवादी असल मानिसझैं तिमी हाम्रा लागि अन्न उपलब्ध गराउँछौ र देवलोकमा दानवीरका नामले प्रख्यात भएर यहाँ दानवीर नामले सुशोभित हुन्छौ।

[सूक्त - २९]

ऋषि - वसुक्र ऐन्द्र। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

वने न वा यो न्यधायि चाकञ्छुचिर्वां स्तोमो भुरणावजीगः।
यस्येदिन्द्रः पुरुदिनेषु होता नृणां नर्यो नृतमः क्षपावान् ॥१॥

हे शीघ्र गमनशील अश्विनीकुमार हो ! पक्षीले रुखमाथिका गुँडमा सुरक्षित राखेका आफ्ना बच्चालाई फलाहार गराएझैं यो पवित्र स्तोत्र तिमीहरूलाई समर्पित गर्दछौं। अनेकौं दिनसम्म हामी यिनै स्तोत्रले इन्द्रदेवलाई आह्वान गर्दछौं। ती इन्द्रदेव नेतृत्व प्रदान गर्नेहरूमा सर्वश्रेष्ठ, पराक्रमशाली, नायक र रातमा पनि सोमपान गर्ने हुन्।

प्र ते अस्या उषसः प्रापरस्या नृतौ स्याम नृतमस्य नृणाम्।
अनु त्रिशोकः शतमावहन्नॄन्कुत्सेन रथो यो असत्ससवान् ॥२॥

हे मनुष्यलाई नेतृत्व प्रदान गर्ने ! यो उषा र अन्य उषा कालमा तिम्रो अर्चनाले हाम्रो पनि श्रेष्ठता जागृत होस्। हे इन्द्रदेव ! त्रिशोक नामका ऋषिले तिम्रो स्तुति प्रार्थनाले तिमीबाट सय मानिसको सहयोग प्राप्त गरेका थिए र कुत्स ऋषि जुन रथमा आरुढ हुन्छन्, त्यसमा पनि तिम्रै सहायताको परिणाम प्राप्त हुन्छ।

कस्ते मद इन्द्र रन्त्यो भूद्दुरो गिरोअभ्युग्रो वि धाव।
कद्वाहो अर्वागुप मा मनीषा आ त्वा शक्यामुपमं राधो अन्नैः ॥३॥

हे इन्द्रदेव ! हाम्रो स्तोत्ररूपी वाणी सुनेर यज्ञस्थलका ढोकातिर तिमी शीघ्र आऊ। कस्तो सोम तिम्रा लागि हर्षदायक, प्रसन्नतादायक र रुचिकर हुन्छ ? हामीलाई असल वाहन कहिले प्राप्त होला ? हाम्रा मनको रहर कहिले पूरा होला ? हामी स्तोता अन्न र धन प्राप्तिका लागि कस्ता साधनाले तिमीलाई प्रशंसित गर्न सक्छौं ?

कदु द्युम्नमिन्द्र त्वावतो नॄन्कया धिया करसे कन्न आगन्।
मित्रो न सत्य उरुगाय भृत्या अन्ने समस्य यदसन्मनीषाः ॥४॥

हे इन्द्रदेव ! तिमी कुन बेला हाम्रा ध्यानले प्रकट हुन्छौ र कुन बेला हामीलाई साधनाको सिद्धि प्राप्त हुन्छ ? कुन खालका स्तोत्र र सत्कर्मले हामी मानिसलाई तिमी आफूजस्तै सामर्थ्यवान् बनाउँछौ ? हे यशस्वी इन्द्रदेव ! तिमी त सबैका सच्चा सखारूप र हितैषि हौ। सबै साधकलाई अन्नले पालनपोषण गर्ने तिम्रो अभिलाषा छ भन्ने सिद्ध हुन्छ।

प्रेरय सूरो अर्थं न पारं ये अस्य कामं जनिधा इव ग्मन्।
गिरश्च ये ते तुविजात पूर्वीर्नर इन्द्र प्रतिशिक्षन्त्यन्नैः ॥५॥

तेजस्वी सोम देवताका लागि राम्रोसित प्रवाहित छ। हे ऋत्विक् हो ! मित्र र वरुणका लागि असल अन्नरूपी सोम संस्कारित गर र महावेगशाली इन्द्रदेवका लागि उत्तम तरिकाले स्तुति उच्चारण गर।

मात्रे नु ते सुमिते इन्द्र पूर्वी द्यौर्मज्मना पृथिवी काव्येन।
वराय ते घृतवन्तः सुतासः स्वाद्मन्भवन्तु पीतये मधूनि ॥६॥

हे इन्द्रदेव ! तिम्रा विशेष कृपाले प्राचीन समयमा बनाएका द्युलोक र पृथ्वी नै विभिन्न लोकका निर्माता हुन्। तिम्रा लागि घिउयुक्त सोमरस प्रस्तुत गरिँदै छ। यो पिएर हर्षित होऊ र मधुर रसले युक्त अन्न हामीलाई प्रसन्नता प्रदान गर्ने होस्।

आ मध्वो अस्मा असिचन्नमत्रमिन्द्राय पूर्णं स हि सत्यराधाः।
स वावृधे वरिमन्ना पृथिव्या अभि क्रत्वा नर्यः पौंस्यैश्च ॥७॥

इन्द्रदेव निश्चित नै ऐश्वर्यदाता हुन्। यस्ता देवताका लागि मधुपर्कले परिपूर्ण सोमपात्र सादर समर्पित गरौं। उनी मानिसका हितैषि हुन् र पृथ्वीका व्यापक क्षेत्रमा आफ्ना पराक्रमले सबै किसिमको उन्नति गर्दछन्।

व्यानळिन्द्रः पृतनाः स्वोजा आस्मै यतन्ते सख्याय पूर्वीः।
आ स्मा रथं न पृतनासु तिष्ठ यं भद्रया सुमत्या चोदयासे ॥८॥

अति शक्तिशाली इन्द्रदेवले शत्रुको सेना छेके। ठूला शत्रुका सेना पनि इन्द्रदेवसित मैत्री सन्धि गर्नका लागि सधैं प्रयत्नशील हुन्छन्। हे इन्द्रदेव ! संसारको हितका लागि सत्प्रेरणाले तिमी समर क्षेत्रमा रथमा आरुढ भएर गाएझैं अहिले पनि रथमा आरुढ भएर प्रस्थान गर।

[सूक्त - ३०]

ऋषि - कवष ऐलूष। देवता - आपो देवता अपांनपात्। छन्द - त्रिष्टुप्।

**प्र देवत्रा ब्रह्मणे गातुरेत्वपो अच्छा मनसो न प्रयुक्ति।**
**महीं मित्रस्य वरुणस्य धासिं पृथुज्रयसे रीरधा सुवृक्तिम्॥१॥**

स्तुतिले प्रशंसित, मनको गतिजस्तै शीघ्र तिमी देवताका लागि राम्ररी प्रवाहित होऊ। हे ऋत्विक् हो ! मित्र र वरुणदेवका लागि श्रेष्ठ अन्नरूपी सोम संस्कारित गर र महा वेगशाली इन्द्रदेवका लागि श्रेष्ठ तरिकाले स्तुति उच्चारण गर।

**अध्वर्यवो हविष्मन्तो हि भूताच्छाप इतोशतीरुशन्तः।**
**अव याश्चष्टे अरुणः सुपर्णस्तमास्यध्वमूर्मिमद्या सुहस्ताः॥२॥**

हे पुरोहित हो ! तिमीहरू हव्यपदार्थले सम्पन्न होओ। प्रीतियुक्त सुखको कामना गर्दै सोमका इच्छाले जलतर्फ शीघ्रतापूर्वक गमन गर। रातो पक्षीजस्तै श्रेष्ठ जल तलतिर बग्दछ। तिमीहरू त्यसलाई सत्कर्मशील हातले तरङ्गरूपमा यज्ञमा समर्पित गर।

**अध्वर्यवोऽप इता समुद्रमपां नपातं हविषा यजध्वम्।**
**स वो दददूर्मिमद्या सुपूतं तस्मै सोमं मधुमन्तं सुनोत॥३॥**

हे ऋत्विक् हो ! पानीको सागर फेला पार र हविष्यान्नले अपांनपात्देवको अर्चना गर। उनले तिमीलाई अति पवित्र र स्वच्छ तरङ्ग प्रदान गरुन्। त्यसैले उनीहरूका लागि मधुर सोमरस समर्पित गर।

**यो अनिध्मो दीदयदप्स्वन्तर्यं विप्रास ईडते अध्वरेषु।**
**अपां नपान्मधुमतीरपो दा याभिरिन्द्रो वावृधे वीर्याय॥४॥**

स्तोताहरू यज्ञकालमा जसको प्रार्थना गर्दछन् र जो विनाकाठ नै अन्तरिक्षमा विद्युत्का रूपमा प्रदीप्त हुन्छन्, उनैले हामीलाई वर्षारूपी जल प्रदान गरुन्, जसबाट इन्द्र तेजस्वी भएर आफ्नो पराक्रम शक्ति उत्पन्न गरुन्।

**याभिः सोमो मोदते हर्षते च कल्याणीभिर्युवतिभिर्न मर्यः।**
**ता अध्वर्यो अपो अच्छा परेहि यदासिञ्चा ओषधीभिः पुनीतात्॥५॥**

तन्नेरी लोग्ने मानिस आफ्नै उमेरकी सुन्दर स्त्रीसित सुहाउँदो र खुसी भएझैं यस जलमा मिसिएको सोम सुशोभित हुन्छ। हे ऋत्विक् हो ! तिमीहरू यस्तै जललाई परबाट प्राप्त गर, जलसित मिसिएर सोम स्वच्छ र पवित्र हुन्छ।

**एवेद्यूने युवतयो नमन्त यदीमुशन्नुशतीरेत्यच्छ।**
**सं जानते मनसा सं चिकित्रेऽध्वर्यवो धिषणापश्च देवीः॥६॥**

युवतीहरू युवा पुरुषप्रति सहज रूपमा नै आकर्षित भएझैं, सहज स्नेह भावले युवकले प्रेयसी युवती प्राप्त गरेझैं ऋत्विक् र उनका स्तुतिले जलदेवतालाई चिन्दछन्। ती दुवैले विचारपूर्वक आआफ्ना कार्य सम्पन्न गर्दछन्।

**यो वो वृताभ्यो अकृणोदु लोकं यो वो मह्या अभिशस्तेरमुञ्चत्।**
**तस्मा इन्द्राय मधुमन्तमूर्मिं देवमादनं प्र हिणोतनापः॥७॥**

हे जलदेवता ! छेकिएको मार्ग तिमीले गमन गर्नका लागि खोल्दछौ र त्यसले तिमीलाई भयङ्कर मार्गबाट मुक्त गराउँछ। तिमी देवताहरूसँगै इन्द्रदेवलाई आनन्दप्रद र मधुर सोमरस प्रदान गर।

**प्रास्मै हिनोत मधुमन्तमूर्मिं गर्भो यो वः सिन्धवो मध्व उत्सः।**
**घृतपृष्ठमीड्यमध्वरेष्वापो रेवतीः शृणुता हवं मे॥८॥**

हे प्रवाहशील अपदेवता ! तिम्रो बीजरूप मधुरसर सोमको प्रवाहका मधुर गुणले युक्त श्रेष्ठ तरङ्ग इन्द्रदेवका लागि प्रेरित गर। हे अनेकौं औषधियुक्त वैभवशाली अपदेवता ! यज्ञका निम्ति घिउको आहुतिसँगै स्तोत्र उच्चारण हुँदै छ। हाम्रो असल वचन सुन।

**तं सिन्धवो मत्सरमिन्द्रपानमूर्मिं प्र हेत य उभे इयर्ति।**
**मदच्युतमौशानं नभोजां परि त्रितन्तुं विचरन्तमुत्सम्॥९॥**

हे प्रवाहशील अपदेवता ! दुवै लोकको कल्याणकारी र आनन्दप्रद पेय सोमप्रवाह इन्द्रदेव र हामीलाई अति संवर्द्धित रूपमा प्रदान गर। त्यो सोम आनन्ददायक कामना पूर्ण गर्ने, आकाशमा उत्पादित, तीनै लोकका आश्रय, सहज मार्गमा गमनशील र निरन्तर प्रवाहशील छ।

आववृंततीरध नु द्विधारा गोषुयुधो न नियवं चरन्तीः।
ऋषे जनित्रीर्भुवनस्य पत्नीरपो वन्दस्व सवृधः सयोनीः ॥१०॥

इन्द्रदेवले बादलका बीचबाट अनेकौं धारा सिर्जना गरेझैं जलका अनेकौं धारामा सोम मिसिन्छ। जल संसारका लागि संरक्षक माताजस्तै हो, सोम त्यससँग समान रूपले मिसिन्छ, त्यो स्वयं तत्त्वरूप हो। हे ऋषि हो ! तिमीहरू यसै जलको प्रार्थना गर।

हिनोता नो अध्वरं देवयज्या हिनोत ब्रह्म सनये धनानाम्।
ऋतस्य योगे वि ष्यध्वमूधः श्रुष्टीवरीर्भूतनास्मभ्यमापः ॥११॥

हे अपदेवता ! तिमी देवताका लागि यज्ञीय अर्चना गर्न यज्ञकार्यमा सहयोग प्रदान गर र धन आर्जन गर्नका लागि स्तोत्र उच्चारण गर। सृष्टिको नियमव्यवस्थाअनुसार अवरोध हटाउँदै जलको वर्षा गर र हामी सबैका लागि कल्याणदायक सिद्ध होऊ।

आपो रेवतीः क्षयथा हि वस्वः क्रतुं च भद्रं बिभृथामृतं च।
रायश्च स्थ स्वपत्यस्य पत्नीः सरस्वती तद्गृणते वयो धात् ॥१२॥

हे समृद्धिप्रदायक पदार्थले सम्पन्न अपदेव ! तिमी अनेकौं ऐश्वर्यका अधिपति हौ। कल्याणकारी कर्म र अन्न आदि धारण गर। तिमी सुसन्तति र ऐश्वर्यका संरक्षक हौ। देवी सरस्वतीले हामी स्तोतालाई असल धनसम्पदा प्रदान गरून्।

प्रति यदापो अदृश्रमायतीर्घृतं पयांसि बिभ्रतीर्मधूनि।
अध्वर्युभिर्मनसा संविदाना इन्द्राय सोमं सुषुतं भरन्तीः ॥१३॥

हे अपदेव ! तिमी घिउ, दुध र महरूपी अन्न धारण गर्दै आउँदा यज्ञीय ऋत्विक्सँग हार्दिक भावनाले युक्त भएर वार्तालाप गर्दछौ र इन्द्रदेवलाई विशेष रीतिले पेलेर तयार गरेको सोमरस प्रदान गर्दछौ। हामी राम्रोसित दर्शन गर्दै तिम्रो प्रार्थना गर्दछौं।

एमा अग्मन्रेवतीर्जीवधन्या अध्वर्यवः सादयता सखायः।
नि बर्हिषि धत्तन सोम्यासोऽपां नप्त्रा संविदानास एनाः ॥१४॥

हामीलाई श्रेष्ठ ऐश्वर्यसम्पन्न र प्राणीको कल्याण गर्ने जल प्राप्त भएको छ। हे याज्ञिक हो ! जललाई राम्रोसित प्रतिष्ठित गर। वर्षाका अधिष्ठाता देवतासित राम्ररी परिचित छौ। सोमरसका लागि उपयुक्त यो जल श्रेष्ठ कुशका आसनमा प्रतिष्ठित गर।

आग्मन्नाप उशतीर्बर्हिरेदं न्यध्वरे असदन्देवयन्तीः।
अध्वर्यवः सुनुतेन्द्राय सोममभूदु वः सुशका देवयज्या ॥१५॥

देवतातिर उर्लिएको जल तत्परतापूर्वक कुशका बीचमा यज्ञस्थलमा प्रतिष्ठित भएको छ। हे ऋत्विक् हो ! इन्द्रदेवका लागि सोमरस समर्पित गर। जल आउनाले देवताका लागि पूजाउपासनाको कर्म सहज र सरलतापूर्वक पूर्ण भयो।

[सूक्त - ३१]

ऋषि - कवष ऐलूष। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

आ नो देवानामुप वेतु शंसो विश्वेभिस्तुरैरवसे यजत्रः।
तेभिर्वयं सुषखायो भवेम तरन्तो विश्वा दुरिता स्याम ॥१॥

हाम्रो स्तुति देवतालाई प्राप्त होस्। स्तुत्य यज्ञदेवले शत्रुबाट हाम्रो संरक्षण गरून्। देवताहरूसँग हामी स्नेहपूर्वक मैत्री स्थापित गर्दछौं र सबै विपदबाट मुक्त हुन्छौं।

परि चिन्मर्तो द्रविणं ममन्यादृतस्य पथा नमसा विवासेत्।
उत स्वेन क्रतुना सं वदेत श्रेयांसं दक्षं मनसा जगृभ्यात् ॥२॥

सबै ऐश्वर्यको आकाङ्क्षा गर्ने मानिस अन्तःकरणको प्रेरणाले सत्यमार्गद्वारा सत्कर्ममा लागून्। उनीहरू असल ज्ञानयुक्त विवेकबुद्धिले देवताको उपासना गरून् र उनको कल्याणकारी विराट् स्वरूप हृदयमा धारण गरून्।

अधायि धीतिरससृग्रमंशास्तीर्थे न दस्ममुप यन्त्यूमाः।
अभ्यानश्म सुवितस्य शूषं नवेदसो अमृतानामभूम ॥३॥

हामीले यज्ञकर्म सम्पन्न गरेका छौं। यज्ञमा प्रयुक्त पदार्थ तीर्थको अंशजस्तै देवताका नजिक पुग्दछन्। देवताहरू सबैका संरक्षक र शत्रुसंहारक हुन्। हामी स्वाभाविक रूपले उपलब्ध हुने सबै सुख प्राप्त गरौं र देवताका स्वरूपसित परिचित होऔं।

नित्यश्चाकन्यात् स्वपतिर्दमूना यस्मा उ देवः सविता जजान।
भगो वा गोभिरर्यमेमनज्यात्सो अस्मै चारुश्छदयदुत स्यात् ॥४॥

विश्वका सृष्टिकर्ता सवितादेवले उत्पन्न गरेका यजमानलाई ऐश्वर्यका अधिपति र दानशील प्रजापतिले श्रेष्ठ फल प्रदान गरुन्। भग र अर्यमादेव स्तुतिले प्रशंसित भएर यस्ता यजमानप्रति प्रीतियुक्त होऊन् र सबै देवताहरू यजमानमाथि सबै किसिमले अनुग्रह गरुन्।

इयं सा भूया उषसामिव क्षा यद्ध क्षुमन्तः शवसा समायन्।
अस्य स्तुतिं जरितुर्भिक्षमाणा आ नः शग्मास उप यन्तु वाजाः ॥५॥

स्तोत्रको इच्छा गर्ने देवताहरू सामर्थ्ययुक्त भएर द्रुतगतिले आउँदा, बिहानी भएझैं पृथ्वी हाम्रा निम्ति प्रकाशमय हुन्छ। हाम्रा प्रार्थनाका अभिलाषी देवताले स्नेह गरिरहून् र हामी आनन्दप्रद अन्न आदि उपभोग्य सामग्री प्राप्त गर्न सकौं।

अस्येदेषा सुमतिः पप्रथानाभवत्पूर्व्या भूमना गौः।
अस्य सनीडा असुरस्य योनौ समान आ भरणे बिभ्रमाणाः ॥६॥

देवतातिर जानका लागि यस बेला हाम्रो सनातन, विस्तृत स्तुति प्रोत्साहित भएर वृद्धि प्राप्त गरिरहेको छ। त्यसैले हाम्रो यस देवत्व संवर्द्धक यज्ञमा सम्पूर्ण देवताले आआफ्ना स्थानमा रहेर सत्परिणाम प्रदान गर्नका लागि आइदिऊन्।

किं स्विद्वनं क उ स वृक्ष आस यतो द्यावापृथिवी निष्टतक्षुः।
संतस्थाने अजरे इतऊती अहानि पूर्वीरुषसो जरन्त ॥७॥

कच्चा सामान उपलब्ध गरेर दिव्यलोक र पृथ्वीको रचना गरिएको कुन वन र कुन वृक्ष होला ? यी दुवै लोक परस्परमा आश्रित, देवताबाट संरक्षित र जीर्णतारहित छन्। दिन र रात दुवै विनीसित परिचित छन्।

नैतावदेना परो अन्यदस्त्युक्षा स द्यावापृथिवी बिभर्ति।
त्वचं पवित्रं कृणुत स्वधावान्यदीं सूर्यं न हरितो वहन्ति ॥८॥

द्यावापृथिवीभन्दा पर पनि यीजस्ता रचयिता अरू कोही छैनन्। सृष्टिका निर्माता र द्युलोकपृथिवीका धारणकर्ता ईश्वर अन्न आदि पोषक पदार्थका स्वामी हुन्। अश्वले सूर्यलाई वहन गर्न सुरु नगर्दै उनले आफ्ना आवरणको रचना गरिसकेका थिए।

स्तेगो न क्षामत्येति पृथ्वीं मिहं न वातो वि ह वाति भूम।
मित्रो यत्र वरुणो अज्यमानोऽग्निर्वने न व्यसृष्ट शोकम् ॥९॥

रश्मिधारी सूर्यले पृथ्वी उल्लङ्घन गर्दैनन् र वायुदेव पृथ्वीलाई अतिवृष्टिले छिन्नभिन्न पार्दैनन्। वनका बीचमा उत्पन्न अग्निजस्तै प्रकट हुने मित्र र वरुण आफ्नो प्रकाश सबै तिरबाट विस्तारित गर्दछन्।

स्तरीर्यत्सूत सद्यो अज्यमाना व्यथिरव्यथीः कृणुत स्वगोपा।
पुत्रो यत्पूर्वः पित्रोर्जनिष्ट शम्यां गौर्जगार यद्ध पृच्छान् ॥१०॥

साँढेले खेदेको गाई बाछो पाउन योग्य भएझैं अग्नि आफैं कष्ट खप्दै संरक्षकलाई सुख प्रदान गर्दछ। उहिले पुर्खाहरूबाट अरणी वा द्यावापृथिवीद्वारा अग्नि उत्पन्न भयो। ऋत्विक्‌हरूले खोजी गर्दा शमी वृक्षबाट अग्निरूपी गाई उत्पन्न भयो।

उत कण्वं नृषदः पुत्रमाहुरुत श्यावो धनमादत्त वाजी।
प्र कृष्णाय रुशदपिन्वतोधर्ऋतमत्र नकिरस्मा अपीपेत् ॥११॥

कण्व ऋषि नृषदका पुत्र भनेर चिनिन्छन्। उनै कालो वर्णका कण्वले हविष्यान्न समर्पित गरेर अग्निदेवबाट ऐश्वर्य सम्पदा उपलब्ध गरे। यस यज्ञमा तेजस्वी अग्निदेव उनै कालो वर्णका कण्वका लागि आफ्नो कान्तिमान् स्वरूप प्रकट गर्छन्। अग्निदेवका लागि कण्व ऋषिको जस्तो यज्ञ अरू कसैले गरेनन्।

[सूक्त - ३२]

**ऋषि** - कवष ऐलूष। **देवता** - विश्वेदेवा। **छन्द** - जगती त्रिष्टुप्।

**प्र सु ग्मन्ता धियसानस्य सक्षणि वरेभिर्वरौं अभि षु प्रसीदतः।**
**अस्माकमिन्द्र उभयं जुजोषति यत्सोम्यस्यान्धसो बुबोधति ॥१॥**

इन्द्रदेव साधकको अर्चना स्वीकार गर्नका लागि यज्ञस्थलतिर आफ्ना अश्व धपाउँछन्। उनी यजमानका सत्कर्मबाट प्रशंसित भएर श्रेष्ठ हविष्य र प्रार्थना ग्रहण गर्न यहाँ आऊन्। यहाँ आएर उनी हाम्रो प्रार्थना र दिइएको आहुति स्वीकार गरुन्। त्यसपछि सोमरूपी अन्न ग्रहण गरुन्।

**वीन्द्र यासि दिव्यानि रोचना वि पार्थिवानि रजसा पुरुष्टुत।**
**ये त्वा वहन्ति मुहुरध्वरौं उप ते सु वन्वन्तु वग्वनौं अराधसः ॥२॥**

हे इन्द्रदेव ! तिमी दिव्य र दीप्तिमान् धाममा घुम्दछौ। हे धेरै तिरबाट पूजित इन्द्रदेव ! तिमी पृथ्वीका श्रेष्ठ स्थानहरूमा निवास गर्दछौ। बारम्बार हाम्रा यज्ञमा तिमीलाई लिएर आउने तिम्रा अश्वले हामी स्तोतालाई ऐश्वर्यसम्पन्न बनाऊन्।

**तदिन्मे छन्त्सद्वपुषो वपुष्टरं पुत्रो यज्जानं पित्रोरधीयति।**
**जाया पतिं वहति वग्नुना सुमत्पुंस इद्भद्रो वहतुः परिष्कृतः ॥३॥**

पुत्रले आमाबाबुको धन ग्रहण गरेझैं इन्द्रदेव पनि अद्भुत धन उत्कृष्ट यज्ञकर्मद्वारा हामीलाई उपलब्ध गराऊन्। कल्याणकारी मधुर वाणीद्वारा स्त्रीले पतिलाई आफ्नो प्रियपात्र बनाएझैं र श्रेष्ठ सुसंस्कृत पुरुषले स्त्रीलाई धर्मपत्नीका रूपमा स्वीकार गरेर सँगसँगै बस्ने गरेझैं इन्द्रदेव शोधित सोमरस पान गरेर हाम्रा स्नेहपात्र बनून् अथवा हामीलाई स्नेहपात्र बनाऊन्।

**तदित्सधस्थमभि चारु दीधय गावो यच्छासन्वहतुं न धेनवः।**
**माता यन्मन्तुर्यूथस्य पूर्व्याभि वाणस्य सप्तधातुरिज्जनः ॥४॥**

गोठतिर जान गाई हतारिएझैं पवित्र यज्ञमा इन्द्रदेव आउने प्रतीक्षामा स्तोत्र उच्चारण गरिँदै छ। हे इन्द्रदेव ! तिमी आफ्ना उज्ज्वल दीप्तिले यज्ञस्थल प्रकाशित गर र हाम्रा स्तोत्रमन्त्रको महानता यज्ञकर्ताहरूमध्ये प्रथम स्थानमा रहोस्। साथै सात किसिमका छन्दका वाणीले स्तुति गर्नेलाई प्राप्त हुने श्रेष्ठ पद हामीलाई पनि प्रदान गर।

**प्र वोऽच्छा रिरिचे देवयुष्पदमेको रुद्रेभिर्याति तुर्वणिः।**
**जरा वा येष्वमृतेषु दावने परि व ऊमेभ्यः सिञ्चता मधु ॥५॥**

हे याज्ञिक हो ! देवत्व प्राप्त गर्ने रहर भएको व्यक्तिले तिमीहरूका सहयोग पाएर देवत्व प्राप्त गर्दछ। रुद्रदेवका गणसित इन्द्रदेव चाँडै एक्लै नै यज्ञस्थलमा पुग्दछन्। प्रार्थना नै अमृतस्वरूप देवतासित ऐश्वर्यरूपी अनुदान उपलब्ध गर्न सक्षम छ। तिमी सबै संरक्षणकर्ता देवताका निमित्त मधुर सोमरस जलमा मिसाएर प्रदान गर।

**निधीयमानमपगूळ्हमप्सु प्र मे देवानां व्रतपा उवाच।**
**इन्द्रो विद्वाँ अनु हि त्वा चचक्ष तेनाहमग्ने अनुशिष्ट आगाम् ॥६॥**

जलका तत्त्वभित्र अग्नि रहस्यमय रूपमा विद्यमान छ। देवताको पुण्य कर्म संरक्षण गर्ने इन्द्रदेवले यो रहस्य हामीलाई बताएका छन्। हे अग्निदेव ! मेधावी इन्द्रदेव नै तिम्रो साक्षात्कार गर्न सक्छन्। उनीसित परामर्श लिएर हामी तिम्रा निकट आएका हौं।

**अक्षेत्रवित्क्षेत्रविदं ह्यप्राट् स प्रैति क्षेत्रविदानुशिष्टः।**
**एतद्वै भद्रमनुशासनस्योत स्रुतिं विन्दत्यञ्जसीनाम् ॥७॥**

गन्तव्यको बाटो नचिनेका व्यक्तिले निश्चित नै पथप्रदर्शकसित परामर्श लिएर लक्ष्यमा पुग्दछ। असल मार्गदर्शकको मार्गदर्शनको कल्याणकारी प्रतिफल हुन्छ र यस्तोमा अपरिचित व्यक्तिले पनि ज्ञानरूपी कल्याणमार्ग उपलब्ध गर्दछन्।

**अद्येदु प्राणीदममन्निमाहापीवृतो अधयन्मातुरूधः।**
**एमेनमाप जरिमा युवानमहेळन्वसुः सुमना बभूव ॥८॥**

गाईको बाछोजस्ता अग्निदेव प्रकट भएको केही समयदेखि लगातार बढिरहेका छन्। उनले आफ्नी आमाको दुग्धपान गरे। उनी सबै कार्य सुगम बनाउने, अपार वैभवले सम्पन्न र श्रेष्ठ मनका व्यवस्थाले पूर्ण रहेका छन्। त्यसपछि यिनलाई युवावस्थाका साथसाथै बुढ्यौली पनि लाग्यो।

एतानि भद्रा कलश क्रियाम कुरुश्रवण ददतो मघानि।
दान इद्वो मघवानः सो अस्त्वयं च सोमो हृदि यं बिभर्मि ॥९॥

हे सम्पूर्ण कलाका ज्ञानले सम्पन्न, स्तुति सुन्ने इन्द्रदेव ! स्तोत्र र प्रार्थना सुनेर श्रेष्ठ ऐश्वर्य प्रदान गर। हे स्तोतारूपी वैभवले सम्पन्न ऋत्विक् हो ! इन्द्रदेव तिमीहरूका लागि ऐश्वर्यदाता होऊन्। हामीले मनमा धारण गरेको सोमरस उनले प्रदान गरुन्।

[सूक्त - ३३]

**ऋषि** – कवष ऐलूष। **देवता** – विश्वेदेवा इन्द्र मैत्रातिथि। **छन्द** – त्रिष्टुप् गायत्री।

**प्र मा युयुज्रे प्रयुजो जनानां वहामि स्म पूषणमन्तरेण।**
**विश्वे देवासो अध मामरक्षन्दुःशासुरागादिति घोष आसीत् ॥१॥**

प्रजा प्रेरित गर्नेले मलाई सँगै नियोजित गरे। मैले पूषादेवलाई अन्तःकरणमा धारण गरेको छु। त्यसपछि सबै देवताले म कवष ऋषिको रक्षा गरे, अनि अदम्य आवरण प्राप्त भयो भन्ने उक्ति सुनियो।

**सं मा तपन्त्यभितः सपत्नीरिव पर्शवः।**
**नि बाधते अमतिर्नग्नता जसुर्वेर्न वेवीयते मतिः ॥२॥**

मेरा नजिकै रहनेहरूले मलाई सौताझैँ दुःख दिन्छन्। दुर्मति, अज्ञान, नग्नता, अभाव, मृत्युको भय र अशक्तताले मलाई सताउँछन्। मेरो मन चरोझैँ चञ्चल हुँदै छ।

**मूषो न शिश्ना व्यदन्ति माध्यः स्तोतारं ते शतक्रतो।**
**सकृत्सु नो मघवन्निन्द्र मृळयाधा पितेव नो भव ॥३॥**

रसले भिजेको धागो मुसाले खाएझैँ हे असङ्ख्य कर्मका निर्वाहक इन्द्रदेव ! तिम्रो उपासक हुँदा पनि हाम्रा मनको व्यथाले हामीलाई खोक्रो पारिरहेको छ। हे ऐश्वर्यवान् इन्द्रदेव ! हामीलाई अभीष्ट फल प्रदान गरेर हाम्रा लागि अति सुखदायक होऊ र पिताले जस्तै हाम्रो संरक्षण गर।

**कुरुश्रवणमावृणि राजानं त्रासदस्यवम्। मंहिष्ठं वाघतामृषिः ॥४॥**

म त्रसदस्युको पुत्र कवष ऋषि, श्रेष्ठ दानी राजा कुरुश्रवणसित ऋत्विक्हरूका लागि दान प्राप्ति गर्ने इच्छाले आएको हुँ।

**यस्य मा हरितो रथे तिस्रो वहन्ति साधुया। स्तवै सहस्रदक्षिणे ॥५॥**

तीन अश्वमा आरुढ मलाई वहन गर्ने र सहस्र दक्षिणा प्रदान गर्ने कुरुश्रवण राजालाई म यस यज्ञमा स्तुति गर्छु।

**यस्य प्रस्वादसो गिर उपमश्रवसः पितुः। क्षेत्रं न रण्वमूचुषे ॥६॥**

हे उपमश्रवस् राजा ! तिम्रा पिताको वाणी आकर्षक खेतजस्तै ज्यादै सरस थियो।

**अधि पुत्रोपमश्रवो नपान्मित्रातिथेरिहि। पितुष्टे अस्मि वन्दिता ॥७॥**

हे मित्रातिथिका पुत्र उपमश्रवस् ! मित्रातिथिका लागि म स्तोत्रगान गर्दछु। तिमी शोक नगरीकन हाम्रा नजिकै आऊ। हामी तिम्रा पिताजीका प्रशंसक हौँ।

**यदीशीयामृतानामुत वा मर्त्यानाम्। जीवेदिन्मघवा मम ॥८॥**

देवताहरू अमृतजस्तै अमर छन्। यदि देवता र मानिसका संरक्षक यहाँ विद्यमान थिए भने ऐश्वर्यवान् मित्रातिथि निश्चित रूपमा नै जीवित हुने सम्भावना हुन सक्दथ्यो।

**न देवानामति व्रतं शतात्मा चन जीवति। तथा युजा वि वावृते ॥९॥**

दैवी अनुशासन अपहेलना गर्दा कसैले सय वर्षको आयु पाउँदैन। हाम्रा सहयोगीले विनासमय साथ छोडेर जानुको कारण पनि दैवीसत्ताको अनुशासन अवज्ञा गर्नु हो।

[सूक्त - ३४]

**ऋषि** – कवष ऐलूष। **देवता** – अक्ष समूह कृषि। **छन्द** – त्रिष्टुप् जगती।

**प्रावेपा मा बृहतो मादयन्ति प्रवातेजा इरिणे वर्वृतानाः।**
**सोमस्येव मौजवतस्य भक्षो विभीदको जागृविर्मह्यमच्छान् ॥१॥**

होचो भूमिमा उब्जिएका ठूलो प्रभावसम्पन्न गतिशील पासाले मलाई उत्साहित गर्दछ। मौजवान् सोम पिउँदा भएझैँ प्रसन्नता र उन्माद भयानक पासाले मलाई गराउँछ।

न मा मिमेथ न जिहीड एषा शिवा सखिभ्य उत मह्यमासीत्।
अक्षस्याहमेकपरस्य हेतोरनुव्रतामप जायामरोधम् ॥२॥

मेरी सुन्दर र सुशील पत्नी कहिल्यै मसित असन्तुष्ट हुन्न। उनी सधैं मतिर मेरा परिवार, आफन्त र मित्रको अथक सेवा गर्दछिन्। केवल यस जुवाका खेलले नै मेरी स्नेहमयी स्त्रीलाई खोसिदियो।

द्वेष्टि श्वश्रूरप जाया रुणद्धि न नाथितो विन्दते मर्डितारम्।
अश्वस्येव जरतो वस्न्यस्य नाहं विन्दामि कितवस्य भोगम् ॥३॥

जुवा खेल्ने व्यक्तिलाई उसकी सासूले सराप्छिन् र उसको सुन्दर पत्नीले उसलाई छोड्छे। ऊ भिखारी भएर कसैसित केही त अरू कसैसित केही मागिहिंड्छ, तापनि उससित विश्वास नहुनाले सबैले उसको तिरस्कार गर्दछन्। बुढा घोडाको कुनै मूल्य नभएझैं जुवाडेले आफ्नो मानप्रतिष्ठा गुमाउँछ।

अन्ये जायां परि मृशन्त्यस्य यस्यागृधद्वेदने वाज्यक्षः।
पिता माता भ्रातर एनमाहुर्न जानीमो नयता बद्धमेतम् ॥४॥

जुवाडेका धनमा यी बलशाली पासाको दृष्टि परेपछि उसकी पत्नीलाई पनि अरूले नै हात पार्दछन्। उसका आमबाबु र दाजुभाइ पनि उससितको सम्बन्धबाट छुट्न थाल्छन् र आखिरमा चिन्न पनि छोडेझैं हुन्छन्। उनीहरू यसलाई बाँधेर लैजाऊ, यससित हाम्रो कुनै सम्बन्ध छैन भन्न थाल्दछन्।

यदादीध्ये न दविषाण्येभिः परायद्भ्योऽव हीये सखिभ्यः।
न्युप्ताश्च बभ्रवो वाचमक्रतँ एमीदेषां निष्कृतं जारिणीव ॥५॥

म जुवारूपी पापकर्मबाट आफूलाई छुटाउँछु, किनभने यसले गर्दा नै मेरा साथीभाइले मलाई बारम्बार अपमानित गरेका छन् भन्ने सोच्दछु, तर यी रातापहेंला पासाले मलाई आकर्षित गर्दछन् र म पनि कुलटा स्त्रीजस्तै भएर फेरि यिनैका नजिक पुग्दछु।

सभामेति कितवः पृच्छमानो जेष्यामीति तन्वा३ शूशुजानः।
अक्षासो अस्य वि तिरन्ति कामं प्रतिदीव्ने दधत आ कृतानि ॥६॥

शरीरले खुसी देखिएको जुवाडे कुन धनीको धनलाई आफ्ना जितको निसाना बनाऊँ भन्ने मनले सोच्दै जुवाका खालमा पुग्दछ। विपक्षी जुवाडेलाई हराउनका लागि तयार गरिएका पासाले धनको रहर झन्झन् बढाउन थाल्दछन्।

अक्षास इदङ्कुशिनो नितोदिनो निकृत्वानस्तपनास्तापयिष्णवः।
कुमारदेष्णा जयतः पुनर्हणो मध्वा सम्पृक्ताः कितवस्य बर्हणा ॥७॥

जुवाका चाल उसले सोचेझैं नचलेपछि पासाहरू जुवाडेलाई बल्छीझैं बिझ्न थाल्छन्, बाणझैं घोच्न थाल्दछन् र छुराझैं काट्न थाल्दछन्। सर्वस्व हारिसकेपछि परिवारका आफन्तलाई ठूलो पिर पर्दछ। त्यसको विपरीत विजयी जुवाडेका लागि पासाहरू छोरो जन्मिएझैं हर्षदायक हुन्छन्। माधुर्यले युक्त र मधुर वचनले जालमा फँसाउने हुन्छन्, तर पराजित जुवाडेलाई त मारी नै दिन्छन्।

त्रिपञ्चाशः क्रीडति व्रात एषां देवइव सविता सत्यधर्मा।
उग्रस्य चिन्मन्यवे ना नमन्ते राजा चिदेभ्यो नम इत्कृणोति ॥८॥

त्रिपन्न वटा पासाका समूहले सत्यधर्मका पालक सूर्यदेवका किरणको जस्तै क्रीडा गर्दछन्। ती उग्र स्वभाव भएका मानिसका क्रोधसित पनि प्रभावित नभईकन रहन्छन्, पासा मानिसका अगाडि झुक्दैनन् र वशमा पनि आउँदैनन्। ठूला राजाले पनि यिनलाई प्रणाम गर्दछन्।

नीचा वर्तन्त उपरि स्फुरन्त्यहस्तासो हस्तवन्तं सहन्ते।
दिव्या अङ्गारा इरिणे न्युप्ताः शीताः सन्तोहृदयं निर्दहन्ति ॥९॥

जुवाका पासा कहिले माथि उचालिन्छन् भने कहिले तल झर्दछन्। हातविनाका हुँदाहुँदै पनि पासाले हात भएका जुवाडेलाई परास्त गर्दछन्। जुवाका पासा दिव्य क्षमताले सम्पन्न हुँदा हुँदै पनि बलिरहेको आगाको कोइलाले झैं डढाउँछन्। छुँदाखेरि शीतल हुँदा हुँदै पनि हृदय पिल्स्याइदिन्छन्।

जाया तप्यते कितवस्य हीना माता पुत्रस्य चरतः क्व स्वित्।
ऋणावा बिभ्यद्धनमिच्छमानोऽन्येषामस्तमुप नक्तमेति ॥१०॥

जुवाडेले त्यागेकी स्त्रीले दुःख पाउँछे र कतै त बरालिएर घुम्ने छोराका आमाले उसैका चिन्तामा दुःख पाउँछन्। ऋणी जुवाडे डरले तर्सिंदै अर्काका घरमा रात बिताउँछ।

स्त्रियं दृष्ट्वाय कितवं ततापान्येषां जायां सुकृतं च योनिम्।
पूर्वाह्णे अश्वान्युयुजे हि बभ्रून्त्सो अग्नेरन्ते वृषलः पपाद ॥११॥

जुवाडे अर्काकी स्त्री राम्रा घरमा सुखले बसेको देखेर आफ्नी पत्नीको दुर्दशामाथि मनमनै पिरोलिन्छ। बिहान हुनासाथ खैरा रङ्गका पासा भएका जुवाका खालमा ऊ फेरि सामेल हुन्छ। साँझसम्ममा उसका शरीरका लुगासमेत नरहने स्थिति आउँदा जुवाडे रातिको चिसोमा आगाका छेउमा बेला बिताउँछ।

यो वः सेनानीर्महतो गणस्य राजा व्रातस्य प्रथमो बभूव।
तस्मै कृणोमि न धना रुणध्मि दशाहं प्राचीस्तदृतं वदामि ॥१२॥

हे कौडा हो ! तिमीहरूका सङ्गठनको मुख्य नायक सबैभन्दा ठूलो राजा हो। त्यसलाई म दस औंला जोडेर प्रणाम गर्दछु। जुवाले प्राप्त धनको हामीलाई रहर छैन। मेरो यो भनाइ सत्य हो।

अक्षैर्मा दीव्यः कृषिमित्कृषस्व वित्ते रमस्व बहु मन्यमानः।
तत्र गावः कितव तत्र जाया तन्मे वि चष्टे सवितायमर्यः ॥१३॥

हे जुवाडे हो ! कहिल्यै जुवा नखेल। खेतीजस्तो उत्पादक कार्य गर। धनलाई नै ठूलो कुरो ठानेर सन्तुष्ट रहो। यसैबाट पत्नी र गाई प्राप्त हुनेछन्। यस्तो परामर्श हामीलाई साक्षात् सवितादेवले नै दिएका हुन्।

मित्रं कृणुध्वं खलु मृळता नो मा नो घोरेण चरताभि धृष्णु।
नि वो नु मन्युर्विशतामरातिरन्यो बभ्रूणां प्रसितौ न्वस्तु ॥१४॥

हे कौडा हो ! हामीलाई आफ्नो साथीको रूपमा मानेर कल्याणकारी होओ। हामीमाथि कष्टदायी, उग्र, क्रोधी स्वभावले प्रहार गर्ने कुरो नसोच। तिमीहरूको यस्तो क्रोध हाम्रा विरोधीलाई होस्। हाम्रा बाँकी शत्रु नै खैरा रङ्गका जुवाका पासोमा जेलिइरहून्।

[सूक्त - ३५]

ऋषि - लुश धानाक। देवता - विश्वेदेवा। छन्द - जगती त्रिष्टुप्।

अबुध्रमु त्य इन्द्रवन्तो अग्नयो ज्योतिर्भरन्त उषसो व्युष्टिषु।
मही द्यावापृथिवी चेततामपोऽद्या देवानामव आ वृणीमहे ॥१॥

इन्द्रदेवसँग आवाहित अग्निदेव बिहानीको अन्धकार समाप्त गर्दछन् र तेजस्वितायुक्त भएर प्रदीप्त हुन्छन्। महिमायुक्त द्युलोक र पृथ्वीलोक आआफ्ना कार्यमा जागरणशील होऊन्। इन्द्र आदि देवताहरू हाम्रो प्रार्थना सुनेर हामीलाई संरक्षण प्रदान गरून्।

दिवस्पृथिव्योरव आ वृणीमहे मातॄन्त्सिन्धून्पर्वताञ्छर्यणावतः।
अनागास्त्वं सूर्यमुषासमीमहे भद्रं सोमः सुवानो अद्या कृणोतु नः ॥२॥

द्युलोक र भूलोक हाम्रा संरक्षक होऊन् भन्ने हाम्रो प्रार्थना छ। लोकनिर्माणमा सहायक सागर, सरोवर, पर्वत, सूर्य र उषाले हामीलाई पापबाट मुक्त गरून् भन्ने विनम्र निवेदन छ। पेलेर श्रेष्ठ रीतिले तयार गरिएको सोम हाम्रा लागि कल्याणकारी होस्।

द्यावा नो अद्य पृथिवी अनागसो मही त्रायेतां सुविताय मातरा।
उषाउच्छन्त्यप बाधतामघं स्वस्त्यग्निं समिधानमीमहे ॥३॥

अत्यन्त वन्दनीय मातापिताजस्ता निष्पाप द्यावापृथिवी श्रेष्ठ सुखको प्राप्तिका लागि हाम्रो संरक्षण गरून्। अन्धकार विनाश गर्ने उषाले हाम्रो पापकर्म विनाश गरून्। हामी तेजस्वी अग्निबाट कल्याणको कामना गर्दछौं।

इयं न उस्रा प्रथमा सुदेव्यं रेवत्सनिभ्यो रेवती व्युच्छतु।
आरे मन्युं दुर्विदत्रस्य धीमहि स्वस्त्यग्निं समिधानमीमहे ॥४॥

धन प्रदान गर्ने, पाप निवारक, सूर्यदेवभन्दा पहिले उत्पन्न हुने उषाले हामी साधकलाई सौभाग्यशाली ऐश्वर्य प्रदान गरून्। निर्धनताले पीडितका क्रोधको सिकार बन्न हामीले नपरौंस्। तेजस्वी अग्निदेवसित हामी कल्याणको कामना गर्दछौं।

प्र याः सिस्रते सूर्यस्य रश्मिभिर्ज्योतिर्भरन्तीरुषसो व्युष्टिषु।
भद्रा नो अद्य श्रवसे व्युच्छत स्वस्त्यग्निं समिधानमीमहे ॥५॥

सूर्यका किरणसँग आउने उषा विशेष प्रकाशमयी भएर अन्धकार विनाश गर्दछन्। यस बेला हामीलाई तिनले अन्न आदि प्रदान गर्दै, हाम्रा लागि कल्याणकारी भएर अन्धकार विनाश गरुन्। तेजस्वी अग्निदेवबाट हामी मङ्गलको कामना गर्दछौं।

अनमीवा उषस आ चरन्तु न उदग्नयो जिहतां ज्योतिषा बृहत्।
आयुक्षातामश्विना तूतुजिं रथं स्वस्त्यग्निं समिधानमीमहे ॥६॥

आरोग्यदायिनी उषा हामीतिर आउँदा विशेष प्रकाशमान यज्ञीय अग्नि पनि प्रज्वलित हुन्छन्। दुवै अश्विनीकुमार शीघ्रगामी रथमा अश्व नियोजित गरेर यहाँ आऊन्। तेजस्वी अग्निदेवसित हामी कल्याणको प्रार्थना गर्दछौं।

श्रेष्ठं नो अद्य सवितर्वरेण्यं भागमा सुव स हि रत्नधा असि।
रायो जनित्रीं धिषणामुप ब्रुवे स्वस्त्यग्निं समिधानमीमहे ॥७॥

हे सवितादेव ! हामीलाई धारण गर्न योग्य धन प्रदान गर। तिमी श्रेष्ठ ऐश्वर्यका दाता हौ। धन उत्पन्न गर्न हामी प्रार्थना र स्तुति गर्दछौं। तेजस्वी अग्निदेवसित हामी सुखको कामना गर्दछौं।

पिपर्तु मा तदृतस्य प्रवाचनं देवानां यन्मनुष्या३ अमन्महि।
विश्वा इदुस्राः स्पळुदेति सूर्यः स्वस्त्यग्निं समिधानमीमहे ॥८॥

सत्कर्मशील मानिसले इच्छा गर्ने देवयज्ञले हामीलाई पनि संरक्षित गरोस्। सूर्यदेव सबै उषा प्रकाशमान गर्दै प्रकट हुन्छन्। प्रदीप्त अग्निसित हामी कल्याणको कामना गर्दछौं।

अद्वेषो अद्य बर्हिषः स्तरीमणि ग्राव्णां योगे मन्मनः साध ईमहे।
आदित्यानां शर्मणि स्था भुरण्यसि स्वस्त्यग्निं समिधानमीमहे ॥९॥

यस यज्ञस्थलमा आज कुशका आसन बिछ्याइएका छन्। अभीष्ट फल प्राप्तिरूप सोम पेल्नका लागि दुई वटा ढुङ्गा राखिएका छन्। हे यजमान हो ! आफ्नो अभीष्ट पूरा गर्नका लागि विद्वेषरहित, स्नेहमूर्ति आदित्यको आश्रय ग्रहण गर। तिमीहरूका कर्म र कर्तव्यका अनुष्ठानले हर्षित अग्निदेवले सुख प्रदान गर्दछन्। प्रदीप्त अग्निदेवसित हामी सुखको प्रार्थना गर्दछौं।

आ नो बर्हिः सधमादे बृहद्दिवि देवाँ ईळे सादया सप्त होतॄन्।
इन्द्रं मित्रं वरुणं सातये भगं स्वस्त्यग्निं समिधानमीमहे ॥१०॥

हे अग्निदेव ! हाम्रा अत्यन्त विस्तृत, दिव्यतायुक्त यज्ञीय सत्कर्ममा देवता एकत्र भएर आनन्दित हुन्छन्। यस्तो प्रगतिदायक यज्ञमा सात होतासँगै इन्द्र, मित्र, वरुण, भगदेव र अन्य देवता पनि बोलाएर प्रतिष्ठित गराऊ। यज्ञमा उपस्थित सम्पूर्ण देवतासित ऐश्वर्यका लागि हामी प्रार्थना गर्दछौं र अग्निदेवसित कल्याणको कामना गर्दछौं।

त आदित्या आ गता सर्वतातये वृधे नो यज्ञमवता सजोषसः।
बृहस्पतिं पूषणमश्विना भगं स्वस्त्यग्निं समिधानमीमहे ॥११॥

हे संसार प्रसिद्ध आदित्यदेव हो ! हामी सबैको कल्याण गर्न यज्ञस्थलमा आओ। पारस्परिक सहयोगबाट ऐश्वर्य वृद्धि गर्न हाम्रो यज्ञ सबैले संरक्षण गर। बृहस्पतिदेव, पूषादेव, अश्विनीकुमार, भगदेव र प्रदीप्त अग्निदेवसित कल्याणको कामना गर्दछौं।

तन्नो देवा यच्छत सुप्रवाचनं छर्दिरादित्याः सुभरं नृपाय्यम्।
पश्वे तोकाय जीवसे स्वस्त्यग्निं समिधानमीमहे ॥१२॥

हे आदित्य हो ! हाम्रो यज्ञ सबै किसिमका सुखले सम्पन्न बनाओ। ऐश्वर्यशाली, सुखप्रद, मानिसको पालन गर्न सक्षम राजभवन हामीलाई प्रदान गर। हामी तेजस्वी अग्निसित पुत्रपौत्रादि, गाई आदि पशुसहित दीर्घजीवन र कल्याणको कामना गर्दछौं।

विश्वे अद्य मरुतो विश्व ऊती विश्वे भवन्त्वग्नयः समिद्धाः।
विश्वे नो देवा अवसा गमन्तु विश्वमस्तु द्रविणं वाजो अस्मे ॥१३॥

मरुत्देव र रुद्र आदि सबै देवले हाम्रो संरक्षण गरुन्। सम्पूर्ण अग्नि प्रज्वलित होऊन्। इन्द्र आदि सबै देवता हाम्रो संरक्षणका लागि यज्ञमा आऊन्। हामीलाई सबै किसिमका ऐश्वर्यसम्पदा र अन्न सामग्री उपलब्ध होस्।

यं देवासोऽवथ वाजसातौ यं त्रायध्वे यं पिपृथात्यंहः।
यो वो गोपीथे न भयस्य वेद ते स्याम देववीतये तुरासः ॥१४॥
हे शीघ्र अभीष्ट फल प्रदायक देवता हो ! तिमीहरू युद्धक्षेत्रमा जसको संरक्षण गर्दै शत्रुपक्षबाट सुरक्षित गर्दछौ, पापकृत्यको निवारण गरेर जसलाई ऐश्वर्यसम्पन्न बनाउँछौ र जो तिमीहरूका संरक्षणमा निर्भय रहन्छन्, हामी देवताको आराधना गर्ने मानिसले त्यसै किसिमका गुण धारण गरौं।

[सूक्त - ३६]

ऋषि - लुश धानाक। देवता - विश्वेदेवा। छन्द - जगती त्रिष्टुप्।

उषासानक्ता बृहती सुपेशसा द्यावाक्षामा वरुणो मित्रो अर्यमा।
इन्द्रं हुवे मरुतः पर्वताँ अप आदित्यान्द्यावापृथिवी अपः स्वः ॥१॥
हामी आफ्ना यज्ञस्थलमा महिमामय एवं श्रेष्ठ शोभायुक्त प्रभात वेला, रात्रि, द्यावा, पृथिवी, वरुण, मित्रगण, अर्यमा, इन्द्र, मरुत्गण, पर्वत, जल, आदित्यगण, अन्तरिक्ष र देवलोक आदिलाई सादर आमन्त्रित गर्दछौं।

द्यौश्च नः पृथिवी च प्रचेतस ऋतावरी रक्षतामंहसो रिषः।
मा दुर्विदत्रा निर्ऋतिर्न ईशत तद्देवानामवो अद्या वृणीमहे ॥२॥
यज्ञका अधिष्ठातास्वरूप र विशाल हृदयका द्यावापृथिवीले हामीलाई सबै पापबाट संरक्षित गरुन्। पापबुद्धिले युक्त मृत्युदेवले हामीलाई आफ्ना नियन्त्रणबाट मुक्त गरुन्। आज हामी देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

विश्वस्मान्नो अदितिः पात्वंहसो माता मित्रस्य वरुणस्य रेवतः।
स्वर्वज्ज्योतिरवृकं नशीमहि तद्देवानामवो अद्या वृणीमहे ॥३॥
ऐश्वर्यसम्पन्न मित्रावरुण र देवताकी माता देवी अदितिले हामीलाई सम्पूर्ण पापबाट जोगाऊन्। त्यसबाट अविनाशी, संरक्षणयुक्त तेजस्विता प्राप्त गरौं। हामी देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

ग्रावा वदन्नप रक्षांसि सेधतु दुष्ष्वप्न्यं निर्ऋतिं विश्वमत्रिणम्।
आदित्यं शर्म मरुतामशीमही तद्देवानामवो अद्या वृणीमहे ॥४॥
सोम पेल्नका लागि चलाइएका ढुङ्गा, पेल्दै गर्दाको समय शब्द निकाल्दै गरिएका यज्ञमा विघ्न हाल्ने असुर, दुःखदायी स्वप्न, मृत्युरूपी पाप र सबै पैशाचिक दुष्कृत्यमा संलग्न शत्रु संहार गर। यसै किसिमले विघ्नरहित यज्ञमा हामी आदित्य र मरुत्हरूबाट सुख प्राप्त गरौं। हामी देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

एन्द्रो बर्हिः सीदतु पिन्वतामिळा बृहस्पतिः सामभिर्ऋक्वो अर्चतु।
सुप्रकेतं जीवसे मन्म धीमहि तद्देवानामवो अद्या वृणीमहे ॥५॥
इन्द्रदेव हाम्रा यज्ञमा आएर आसन ग्रहण गरुन्। वाणी र पृथ्वी हामीलाई श्रेष्ठ फल प्रदान गर्ने होऊन्। सामगानले प्रशंसायुक्त बृहस्पतिदेवले उनीहरूको स्तुति गरुन्। हामी जीवनमा काम लाग्ने, श्रेष्ठ अभिलाषा पूर्ण गर्ने खालको धन उपलब्ध गरौं। हामी देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

दिविस्पृशं यज्ञमस्माकमश्विना जीराध्वरं कृणुतं सुम्नमिष्टये।
प्राचीनरश्मिमाहुतं घृतेन तद्देवानामवो अद्या वृणीमहे ॥६॥
हे अश्विनीकुमार हो ! हाम्रो सत्कर्मरूपी यज्ञ अति तेजस्वी अग्निले युक्त, हिंसारहित र अनिष्टरहित भएर खोजेको कुरो पूरा गराउने र कल्याणप्रद होस् भन्ने तिमी कृपा गर। जुन अग्निमा घिउसहित हवि प्रदान गरिन्छ, त्यसका ज्योतिले देवतालाई प्रेरित गरोस्। आज हामी देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

उप ह्वये सुहवं मारुतं गणं पावकमृष्वं सख्याय शंभुवम्।
रायस्पोषं सौश्रवसाय धीमहि तद्देवानामवो अद्या वृणीमहे ॥७॥
यज्ञ सम्पादन गर्ने, पवित्रताले युक्त, दर्शनीय, सुखदायक र धन दान गर्ने मरुत्हरूको हामी प्रार्थना गर्दछौं। उनलाई हामी मैत्री भावनाले आह्वान गर्दछौं। सुखदाता, कीर्तिवान्, अन्न दान गर्ने

मरुत्‌हरूलाई हामी हृदयले नै धारण गर्दछौं। हामी तेजस्वी अग्निदेवबाट असल संरक्षणको कामना गर्दछौं।

अपां पेरुं जीवधन्यं भरामहे देवाव्यं सुहवमध्वरश्रियम्।
सुरश्मिं सोममिन्द्रियं यमीमहि तद्देवानामवो अद्या वृणीमहे ॥८॥

जलका संरक्षक, प्राणीका लागि सन्तोषप्रद, देवताका सन्तुष्टिदायक, प्रशंसनीय, श्रेष्ठ मानिएका, यज्ञको शोभा र श्रेष्ठ रश्मिसमूहले युक्त सोमलाई हामी धारण गर्दछौं। उनीबाट हामी शक्ति प्राप्त गर्नका लागि कामना गर्दछौं र सबै देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

सनेम तत्सुसनिता सनित्वभिर्वयं जीवा जीवपुत्रा अनागसः।
ब्रह्मद्विषो विष्वगेनो भरेरत तद्देवानामवो अद्या वृणीमहे ॥९॥

आफ्नो र आफ्ना सन्तानको दीर्घायुयुक्त र दुष्कर्मरहित भएर हामो उपभोग्य सामग्रीसँगै सत्कर्मद्वारा परमात्माको साँच्चो आराधना गरौं। ज्ञानले रहित सबै किसिमका पाप कर्ममा संलग्न हुँदा शीघ्र नै परमात्माले विनाश गरुन्। हामी देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

ये स्था मनोर्यज्ञियास्ते शृणोतन यद्वो देवा ईमहे तद्ददातन।
जैत्रं क्रतुं रयिमद्वीरवद्यशस्तद्देवानामवो अद्या वृणीमहे ॥१०॥

हे आराध्य देवता हो ! तिमीहरू सम्पन्न गरिने यज्ञभाग उपलब्ध गर्ने अधिकारी हुनाले हाम्रो प्रार्थना र स्तुति सुनिदेऊ। हामी तिमीसित जुन मनोरथको कामना गर्दछौं, ती सबै ज्ञान, बल, ऐश्वर्य र सन्तान आदिले युक्त यश उपलब्ध गराऊ। हामी देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

महदद्य महतामा वृणीमहेऽवो देवानां बृहतामनर्वणाम्।
यथा वसु वीरजातं नशामहै तद्देवानामवो अद्या वृणीमहे ॥११॥

आज हामी महिमायुक्त, व्यापक र अविचल इन्द्र आदि देवताबाट संरक्षणका लागि प्रार्थना गर्दछौं। त्यसबाट हामी ऐश्वर्य र वीर सन्तान प्राप्त गरौं। हामी देवशक्तिबाट असल संरक्षणको कामना गर्दछौं।

महो अग्नेः समिधानस्य शर्मण्यनागा मित्रे वरुणे स्वस्तये।
श्रेष्ठे स्याम सवितुः सवीमनि तद्देवानामवो अद्या वृणीमहे ॥१२॥

सवितादेवको आज्ञाअनुसार हामी देवताको उत्तम संरक्षण वरण गर्दछौं। हामी प्रदीप्त अग्निदेवको आश्रय पाएर मित्र र वरुणदेवका मध्यमा अपराधरहित भएर सधैं कल्याण प्राप्त गरौं।

ये सवितुः सत्यसवस्य विश्वे मित्रस्य व्रते वरुणस्य देवाः।
ते सौभगं वीरवद्गोमदप्नो दधातन द्रविणं चित्रमस्मे ॥१३॥

सत्कर्मका प्रेरक सवितादेव, मित्र र वरुणका व्रतनियममा संलग्न देवताहरूले वीर सन्तानयुक्त, पशुले सम्पन्न सम्पदा, ज्ञानरूपी धन, पूजायोग्य सम्पत्ति र सत्कर्म गर्ने प्रेरणा हामीलाई प्रदान गरुन्।

सविता पश्चातात्सविता पुरस्तात्सवितोत्तरात्तात्सविताधरात्तात्।
सविता नः सुवतु सर्वतातिं सविता नो रासतां दीर्घमायुः ॥१४॥

सबै कुराको उत्पत्ति गराउने सवितादेव पूर्व, पश्चिम, उत्तर, दक्षिण आदि सबै दिशामा विस्तृत छन्। तिनै सवितादेवले हामीलाई सबै किसिमका ऐश्वर्यसम्पदा उपलब्ध गराऊन्। उनै सवितादेवले हामीलाई दीर्घ आयु प्रदान गरुन्।

[सूक्त - ३७]

ऋषि - अभितपा सौर्य। देवता - सूर्य। छन्द - जगती त्रिष्टुप्।

नमो मित्रस्य वरुणस्य चक्षसे महो देवाय तदृतं सपर्यत।
दूरेदृशे देवजाताय केतवे दिवस्पुत्राय सूर्याय शंसत ॥१॥

हे ऋत्विक्‌हरू हो ! मित्र वरुणदेवतालाई देखेका महान् दिव्यतायुक्त, अति दूरबाट नै सबै वस्तु देख्ने, देवताका कुलमा उत्पन्न, संसार प्रकाशित गर्ने र द्युलोकका पुत्रजस्ता सूर्यदेवलाई नमस्कार गर। उनका सत्यपथको अनुसरण गर्दै उनलाई पूजा गर।

**सा मा सत्योक्तिः परि पातु विश्वतो द्यावा च यत्र ततनन्नहानि च।**
**विश्वमन्यन्नि विशते यदेजति विश्वहापो विश्वाहोदेति सूर्यः ॥२॥**

जसका आश्रयले द्युलोक, पृथ्वी र दिनरात उत्पन्न हुन्छन्, जो गतिमान् छन्, जडका अतिरिक्त चेतन पनि जसका आश्रयमा निवास गर्दछन्, जसका प्रभावले जल निरन्तर प्रवाहित रहन्छ र सूर्योदय हुन्छ, सत्यले युक्त यस्ता वचनले हामीलाई निरन्तर सबै तिरबाट संरक्षित गरुन्।

**न ते अदेवः प्रदिवो नि वासते यदेतशेभिः पतरै रथर्यसि।**
**प्राचीनमन्यदनु वर्तते रज उदन्येन ज्योतिषा यासि सूर्य ॥३॥**

हे सूर्यदेव ! तिमीले वेगशील अश्व रथमा जोडेर आकाशमार्गमा गमन गर्दा देवताभन्दा बाहेक तिम्रा नजिक पुग्न कुनै सक्दैन। तिमी जुन तेजसँग उदाउँछौ, त्यसैले तिम्रो अनुगमन गर्दछ।

**येन सूर्य ज्योतिषा बाधसे तमो जगच्च विश्वमुदियर्षि भानुना।**
**तेनास्मद्विश्वामनिरामनाहुतिमपामीवामप दुष्वप्न्यं सुव ॥४॥**

हे सूर्यदेव ! तिमी जुन तेजले अन्धकार हटाउँछौ र जनु प्रकाशकिरणले सम्पूर्ण विश्व आलोकित गर्दछौ, उसै तेजका प्राणले पापकर्मको निवारण गर। अन्नजलको अभाव, रोगव्याध तथा कुविचार आदि मानसिक कष्ट निवारण गर।

**विश्वस्य हि प्रेषितो रक्षसि व्रतमहेडयन्नुच्चरसि स्वधा अनु।**
**यदद्य त्वा सूर्योपब्रवामहै तं नो देवा अनु मंसीरत क्रतुम् ॥५॥**

हे सूर्यदेव ! तिमी सर्वप्रेरक भएर सहज स्वभावले विश्वका नियम र कर्म संरक्षण गर्दछौ र बिहान यज्ञको आहुति ग्रहण गर्दछौ। हे सूर्यदेव ! आज जुन बेला हामी तिम्रा पवित्र नामको प्रार्थना गर्दछौं, त्यो यज्ञीय क्रम इन्द्र आदि देवताले समर्थन गरुन्।

**तं नो द्यावापृथिवी तन्न आप इन्द्रः शृण्वन्तु मरुतो हवं वचः।**
**मा शूने भूम सूर्यस्य सन्दृशि भद्रं जीवन्तो जरणामशीमहि ॥६॥**

इन्द्रदेव, मरुत्हरू, जल र द्यावापृथिवीले हाम्रो आह्वान र वाणी सुनून्। हामीमाथि सूर्यदेवको कृपा भइरहोस्। उनका दर्शनको लाभ प्राप्त हुँदै हामी कष्टबाट जोगिऔं। लामो आयु प्राप्त गरेर कल्याणकारी एवं सुखी जीवन भोग गर्दै बुढ्यौलीतिर लागौं।

**विश्वाहा त्वा सुमनसः सुचक्षसः प्रजावन्तो अनमीवा अनागसः।**
**उद्यन्तं त्वा मित्रमहो दिवेदिवे ज्योग्जीवाः प्रति पश्येम सूर्य ॥७॥**

हे आदित्यदेव ! तिम्रा कृपाले हामी सधैं सुविचारसम्पन्न, शोभन दृष्टियुक्त, सुसन्तानले सम्पन्न, आरोग्यसम्पन्न र पापकर्मले रहित होऔं। हे मित्रहरूबाट पूजनीय ! हामी जीवन्त रहेर प्रतिदिन उदाउँदै गरेका तिम्रो ज्योतिस्वरूपको दर्शन गरौं।

**महि ज्योतिर्बिभ्रतं त्वा विचक्षण भास्वन्तं चक्षुषेचक्षुषे मयः।**
**आरोहन्तं बृहतः पाजसस्परि वयं जीवाः प्रति पश्येम सूर्य ॥८॥**

हे सूर्यदेव ! महिमामय ज्योति धारण गर्ने, देदीप्यमान, सबैका नेत्रका लागि सुखद, अति शक्तिमान्, समुद्रको जलभन्दा माथि जलमण्डलमा उदित हुँदै गरेका तिम्रो दर्शन लाभले हामी सबै प्रतिदिन लाभान्वित होऔं।

**यस्य ते विश्वा भुवनानि केतुना प्र चेरते नि च विशन्ते अक्तुभिः।**
**अनागास्त्वेन हरिकेश सूर्याह्नाह्ना नो वस्यसावस्यसोदिहि ॥९॥**

हे हरियो रश्मियुक्त सूर्यदेव ! तिम्रो ज्ञानरूपी ध्वजाले सम्पूर्ण विश्व नै प्रकाशमान हुन्छ र त्यसैबाट तिमी प्रत्येक रात्रिमा अन्धकार हटाउँछौ। तिमी उसै ध्वजासँग प्रत्येक दिन उदाऊ। हामीलाई पापकर्मबाट निवृत्त गरेर श्रेयमार्गमा चलाएर श्रेयस्कर हौ।

**शं नो भव चक्षसा शं नोअह्ना शं भानुना शं हिमा शं घृणेन।**
**यथा शमध्वञ्छमसद्दुरोणे तत्सूर्य द्रविणं धेहि चित्रम् ॥१०॥**

हे सूर्यदेव ! तिमी आफ्ना तेजस्विताले हाम्रा लागि कल्याणकारी होऊ। आफ्ना दिवस, रश्मि, शीतलता र उष्णताले हामीलाई सुखी गराऊ। तिमी हाम्रा जीवनपथ र घरमा पनि शान्तिको वर्षा गर। हामीलाई ऐश्वर्य प्रदान गर।

अस्माकं देवा उभयाय जन्मने शर्म यच्छत द्विपदे चतुष्पदे।
अदत्पिबदूर्जयमानमाशितं तदस्मे शं योररपो दधातन ॥११॥

हे देवता हो ! तिमीहरू दुई खुट्टे मानिस वा पक्षी तथा चार खुट्टे पशु सबैलाई सुख प्रदान गर। सबैले खानपिउने शक्ति बढाउने बन। सबैलाई हितकारी, निष्पाप र स्वावलम्बी जीवन प्रदान गर।

यद्वो देवाश्चकृम जिह्वया गुरु मनसो वा प्रयुती देवहेडनम्।
अरावा यो नो अभि दुच्छुनायते तस्मिन्तदेनो वसवो नि धेतन ॥१२॥

हे ऐश्वर्यवान् देवता हो ! वाणी या मनले हामीबाट देवता रिसाउने खालको जुन पाप हुन जाला, त्यसको दोष त्यस्तामाथि हालिदेओ, जो यज्ञरहित र दानशील स्वभावरहित भएकाले हाम्रो अनिष्ट गर्ने हुन्छन्।

[सूक्त - ३८]

ऋषि - इन्द्र मुष्कवान्। देवता - इन्द्र। छन्द - जगति।

अस्मिन्न इन्द्र पृत्सुतौ यशस्वति शिमीवति क्रन्दसि प्राव सातये।
यत्र गोषाता धृषितेषु खादिषु विष्वक्पतन्ति दिद्यवो नृषाह्ये ॥१॥

हे इन्द्रदेव ! तेजस्वितायुक्त, आक्रमणमाथि आक्रमण भइरहेका सङ्ग्राममा तिमी वीरलाई सुहाउँदो शौर्य उद्घोष गर्दछौ र शत्रुबाट जितेका गाई सुरक्षित गर्दछौ। यस युद्धमा एकोहोरो तिखो धार भएका बाण योद्धा शत्रुमाथि खस्दा देख्नेहरू छक्क पर्छन्।

स नः क्षुमन्तं सदने व्यूर्णुहि गोअर्णसं रयिमिन्द्र श्रवाय्यम्।
स्याम ते जयतः शक्र मेदिनो यथा वयमुश्मसि तद्वसो कृधि ॥२॥

हे इन्द्रदेव ! तिमी प्रचुर धनधान्य र गाईरूपी धनले हाम्रो घर भराइदेऊ। हे सबैका आश्रयदाता इन्द्रदेव ! तिमी विजयी भएर हाम्रा कृपापात्र भइदेऊ। हामी जुन ऐश्वर्यको कामना गर्दछौं, त्यो हामीलाई उपलब्ध होस्।

यो नो दास आर्यो वा पुरुष्टुतादेव इन्द्र युधये चिकेतति।
अस्माभिष्टे सुषहाः सन्तु शत्रवस्त्वया वयं तान्वनुयाम सङ्गमे ॥३॥

हे असङ्ख्यले स्तुति गरिने इन्द्रदेव ! दास, आर्य वा अरू नै कुनै जाति र देवताविरोधी असुर हामीसित सङ्ग्राम गर्ने रहर गर्दछन् भने तिम्रा कृपाले ती शत्रु पराजित होऊन्। तिम्रा सहयोगले हामी उनलाई जितौं।

यो दभ्रेभिर्हव्यो यश्च भूरिभिर्यो अभीके वरिवोविन्नृषाह्ये।
तं विखादे सस्निमद्य श्रुतं नरमर्वाञ्चमिन्द्रमवसे करामहे ॥४॥

अल्पसङ्ख्यक र बहुसङ्ख्यक सबै मानिसले अर्चना गर्ने, भयङ्कर सङ्ग्राममा विजयी बनेर उत्तम धन प्राप्त गर्ने पवित्रतायुक्त र सुप्रसिद्ध नायक इन्द्रदेवलाई हामी संरक्षणका लागि आह्वान गर्दछौं।

स्ववृजं हि त्वामहमिन्द्र शुश्रवानानुदं वृषभ रध्रचोदनम्।
प्र मुञ्चस्व परि कुत्सादिहा गहि किमु त्वावान्मुष्कयोर्बद्ध आसते ॥५॥

हे साधकलाई प्रोत्साहित गर्ने इन्द्रदेव ! हामीलाई कोबाट प्रोत्साहन प्राप्त होला ? तिमी आफ्ना सामर्थ्यले आफ्नो बन्धन काट्न सक्षम छौ भन्ने कुरो हामीलाई थाहा छ। त्यसैले स्वयं र अर्कालाई पनि शीघ्र मुक्त गर। कुत्सका बन्धनबाट हामीलाई मुक्त गर र यहाँ उपस्थित होऊ। तिमीजस्तो समर्थ व्यक्ति पनि मुष्कका बन्धनमा बाँधिन्छौ र ?

[सूक्त - ३९]

ऋषि - घोषा काक्षीवती। देवता - अश्वनीकुमार। छन्द - जगती त्रिष्टुप्।

यो वां परिज्मा सुवृदश्विना रथो दोषामुषासो हव्यो हविष्मता।
शश्वत्तमासस्तमु वामिदं वयं पितुर्न नाम सुहवं हवामहे ॥१।

हे अश्विनीकुमार हो ! तिमीहरूको सर्वत्र विचरणशील उत्तम सुखदायी रथलाई आवश्यक कार्यका लागि रातदिन यजमानहरू आदरपूर्वक आह्वान गर्दछन्। हामी त्यस रथको नाम उच्चारण गर्दछौं। पिताको नाम लिंदा मनमा आनन्द आएझैं यस रथमा तिमीहरूलाई आह्वान गर्दा प्रसन्नता हुन्छ।

चोदयतं सूनृताः पिन्वतं धिय उत्पुरन्धीरीरयतं तदुश्मसि।
यशसं भागं कृणुतं नो अश्विना सोमं न चारुं मघवत्सु नस्कृतम् ॥२॥

हे अश्विनीकुमार हो ! हामीलाई असल कुरामा प्रेरित गर। हाम्रो असल कर्म सफल बनाओ। तिमीहरू दुवै विभिन्न किसिमका प्रेरणा प्रकट गर भन्ने हामी आशा गर्दछौं। हामीलाई कीर्तियुक्त उपयोगी ऐश्वर्य प्रदान गर। सोमरसझैं कल्याणकारी ऐश्वर्यको सम्पन्नतामा हामीलाई सर्वश्रेष्ठ बनाओ।

अमराजुरश्चिद्भवथो युवं भगोऽनाशोदिवितारापस्य चित्।
अन्धस्य चिन्नासत्या कृशस्य चिद्युवामिदाहुर्भिषजा रुतस्य चित् ॥३॥

हे सत्यनिष्ठ अश्विनीकुमार हो ! पिताको घरमा जब एउटी नारी बुढिँदै थिइन्, त्यस बेला तिमीहरू दुवैका सहयोगले उनलाई सौभाग्यस्वरूप वर प्राप्त भयो। जो हिँड्न नसक्ने हुन्छन्, त्यस्ताका लागि तिमीहरू आश्रयरूप हौ। तिमीहरू नेत्रहीन, दुर्बल शरीर र रोगले दुःख दिएका मानिसका लागि चिकित्सक मानिन्छौ।

युवं च्यवानं सनयं यथा रथं पुनर्युवानं चरथाय तक्षथुः।
निष्ट्वौग्र्यमूहथुरद्भ्यस्परि विश्वेत्ता वां सवनेषु प्रवाच्या ॥४॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुईले जर्जर शरीर भएका च्यवन ऋषिलाई उस्तै किसिमले यौवन प्रदान गऱ्यौ, जसरी कुनै पुराना रथलाई नयाँ किसिमले बनाएर फेरि गुड्नका लागि उपयुक्त पारिन्छ। तिमीहरूले नै तुग्रका पुत्र भुज्युलाई सुरक्षित गर्दै जलमाथि ल्यायौ। तिमीहरूका यी कार्य यज्ञमा विशेष रूपले वर्णनयोग्य छन्।

पुराणा वां वीर्या३ प्र ब्रवा जनेऽथ्यो हासथुर्भिषजा मयोभुवा।
ता वां नु नव्यावबसे करामहेऽयं नासत्या श्रदरिर्यथा दधत् ॥५॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुईका उहिलेका वीरतापूर्ण कार्यहरू हामी प्रचार गर्दछौं। तिमीहरू दुवै अति कुशल चिकित्सक हौ। तिमीहरूको आश्रय प्राप्त गर्नका लागि हामी प्रार्थना गर्दछौं। जसो गर्दा यजमान श्रद्धाका भावनाले युक्त हुन्छन्, तिमीहरू उसै खालको कृपा गर।

इयं वामह्वे शृणुतं मे अश्विना पुत्रायेव पितरा मह्यं शिक्षतम्।
अनापिरज्ञा असजात्यामतिः पुरा तस्या अभिशस्तेरव स्पृतम् ॥६॥

हे अश्विनीदेव हो ! यस पुकारले तिमीहरूलाई आह्वान गरेको छ। यस निवेदनमाथि ध्यान देओ। पिताले पुत्रलाई मार्गदर्शन गराएझैं तिमीहरू पनि हामीलाई परामर्श देओ। मेरो सहायक बन्धु अर्को कोही पनि छैन। म ज्ञानविना अल्पज्ञ र आफन्त परिवारविना छु। मैले दुर्मतिग्रस्त हुनुभन्दा पहिले नै मलाई यस दुर्दशाबाट छुटाओ।

युवं रथेन विमदाय शुन्ध्युवं न्यूहथुः पुरुमित्रस्य योषणाम्।
युवं हवं वध्रिमत्या अगच्छतं युवं सुषुतिं चक्रथुः पुरन्धये ॥७॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवैले पुरुमित्र नामका राजाकी शुन्ध्युव नामकी पुत्रीलाई रथमा चढाएर उनका पति विमदका जिम्मा लगायौ। वध्रिमतीले आह्वान गर्दा तिमीहरू दुवै उनका नजिक आयौ। उनको निवेदन सुनेर र प्रसव वेदनाबाट मुक्त गराउन प्रसव कालमा सहायक बनेका थियौ।

युवं विप्रस्य जरणामुपेयुषः पुनः कलेरकृणुतं युवद्वयः।
युवं वन्दनमृश्यदादुदूपथुर्युवं सद्यो विश्पलामेतवे कृथः ॥८॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवैले मरन्च्याँसे ऋषिलाई यौवन प्रदान गरेका थियौ, पत्नीका शोकले दुःखी वन्दन ऋषिलाई कूपबाट निकाल्यौ। तिमीहरूले नै लङ्गडी विश्पलालाई फलामको तिघ्रो हालिदिएर हिँड्डुल गर्न सक्ने बनायौ।

युवं ह रेभं वृषणा गुहा हितमुदैरयतं ममृवांसमश्विना।
युवमृबीसमुत तप्तमत्रय ओमन्वन्तं चक्रथुः सप्तवध्रये ॥९॥

हे अभीष्ट फल प्रदान गर्ने अश्विनीकुमार हो ! रेभ ऋषिलाई दुष्ट शत्रुले मरणासन्न हुने गरी गुफामा थुनेर लुकाएका बेला तिमीहरूले नै उनलाई कष्टबाट मुक्त गरायौ। अत्रि ऋषि सात बन्धनमा बाँधिएर दन्कँदो आगाका कुण्डमा हालिएका बेला पनि तिमीहरू दुवैले उनलाई अग्निकुण्डबाट मुक्त गराएका थियौ।

युवं श्वेतं पेदवेऽश्विनाश्वं नवभिर्वाजैर्नवती च वाजिनम्।
चर्कृत्यं ददथुर्द्रावयत्सखं भगं न नृभ्यो हव्यं मयोभुवम् ॥१०॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुईले नै पेदु राजालाई उनान्सय अश्वसँगै एउटा सेतो वर्णको उत्तम अश्व पनि प्रदान गरेका थियौ। यो सबै शत्रुपक्ष पराजित गर्नका लागि थियो। त्यो विचित्र अश्व शत्रुको सेना लखट्ने, बोलाउँदा भट्ट आउने, योद्धालाई बहुमूल्य ऐश्वर्य प्रदान गर्ने थियो। त्यसको नाम उच्चारण गर्दाखेरि प्रसन्नता हुन्थ्यो र देख्दाखेरि मनमा रमाइलो लाग्दथ्यो।

न तं राजानावदिते कुतश्चन नांहो अश्नोति दुरितं नकिर्भयम्।
यमश्विना सुहवा रुद्रवर्तनी पुरोरथं कृणुथः पत्न्या सह ॥११॥

हे अविनाशी राजाजस्ता अश्विनीकुमार हो ! तिमीहरू दुईको नाम उच्चारण गर्दा पनि आनन्दको अनुभव हुन्छ। तिमीहरू मार्गमा गमन गर्दा सबै तिरबाट प्रार्थना हुन्छ। दम्पतीलाई रथका अघिल्ला भागमा चढाएर आश्रय दिँदा पनि उनीहरूलाई पाप, दुर्गति र संसारका भयले स्पर्श गर्न पनि सक्दैन।

आ तेन यातं मनसो जवीयसा रथं यं वामृभवश्चक्रुरश्विना।
यस्य योगे दुहिता जायते दिव उभे अहनी सुदिने विवस्वतः ॥१२॥

हे अश्विनीकुमार हो ! तिमीहरूका लागि ऋभुदेवले प्रदान गरेको, प्रकट हुँदा तेजस्वी अन्तरिक्षकी पुत्री उषाको पनि उदय हुने र सूर्यदेवबाट अति मनोहर दिन र रात्रिले जन्म लिने, मनैले मात्रै गतिशील हुने रथमा तिमीहरू आओ।

ता वर्तिर्यातं जयुषा वि पर्वतमपिन्वतं शयवे धेनुमश्विना।
वृकस्य चिद्वर्तिकामन्तरास्याद्युवं शचीभिर्ग्रसितामुमुञ्चतम् ॥१३॥

हे अश्विनीकुमार हो ! तिमीहरू उसै विजयी रथले पर्वततर्फ प्रस्थान गरेर शयका बुढा गाई फेरि दुहुना बनाओ। तिमीहरूका सामर्थ्यले ब्वाँसाका मुखबाट पोथीभाले भँगेरा मुक्त गराएको थियो।

एतं वां स्तोममश्विनावकर्मातक्षाम भृगवो न रथम्।
न्यमृक्षाम योषणां न मर्ये नित्यं न सूनुं तनयं दधानाः ॥१४॥

हे अश्विनीकुमार हो ! भृगुका वंशजले रथ निर्माण गरेझैं स्तोत्र तिमीहरूका लागि समर्पित गर्दछन्। ज्वाइँलाई छोरी दिने बेलामा मानिसहरूले लुगा र गहनाले सिँगारेझैं हामी स्तोत्रको भावना समर्पित गर्दछौं। हाम्रा पुत्रपौत्रादि सन्तान सधैं नै सुखसौभाग्यले युक्त होऊन्।

[सूक्त - ४०]

ऋषि - घोषा काक्षीवती। देवता - अश्विनीकुमार। छन्द - जगती।

रथं यान्तं कुह को ह वां नरा प्रति द्युमन्तं सुविताय भूषति।
प्रातर्यावाणं विभ्वं विशेविशे वस्तोर्वस्तोर्वहमानं धिया शमि ॥१॥

हे कर्मद्रष्टा अश्विनीकुमार हो ! तिमीहरूको तेजस्वी रथ बिहान जति बेला हिँड्दछ र प्रत्येक साधककहाँ सुखको उपभोग गर्ने साधन ल्याउँछ, त्यस बेला आफ्ना यज्ञको सफलताका लागि कुन याजकले त्यस तेजस्वी रथको स्तुतिगान नगर्ला ? तिम्रो त्यो रथ कुन ठाउँमा राखिएको छ ?

कुह स्विद्दोषा कुह वस्तोरश्विना कुहाभिपित्वं करतः कुहोषतुः।
को वां शयुत्रा विधवेव देवरं मर्यं न योषा कृणुते सधस्थ आ ॥२॥

हे अश्विनीकुमार हो ! तिमीहरू राति कता र दिउँसो कतातिर जान्छौ ? कहाँ आफ्नो समय बिताउँछौ ? विधवा आइमाइले दोस्रो लोग्ने वा सुन्दर स्त्रीले आफ्नो पतिलाई सम्मानित गरेझैं यज्ञकालमा आदरसहित तिमीहरूलाई कसले आह्वान गर्दछ ?

प्रातर्जरेथे जरणेव कापया वस्तोर्वस्तोर्यजता गच्छथो गृहम्।
कस्य ध्वस्रा भवथः कस्य वा नरा राजपुत्रेव सवनाव गच्छथः ॥३॥

हे नेतृत्वको क्षमतासम्पन्न अश्विनीकुमार हो ! बिहान वैभवशाली राजालाई प्रशंसकका स्तोत्रले जगाएझैं तिमीहरू दुईका लागि स्तोताहरू स्तोत्रगान गर्दछन्। यज्ञको भाग प्राप्त गर्नका लागि प्रतिदिन कुन यजमानका घरमा प्रवेश गर्दछौ ? यजमानको कुन दोष निवारण गर्दछौ ? तिमीहरू दुवै राजकुमारझैं कुन यजमानका यज्ञमा जान्छौ ?

युवां मृगेव वारणा मृगण्यवो दोषा वस्तोर्हविषा नि ह्वयामहे।
युवं होत्रामृतुथा जुह्वते नरेषं जनाय वहथः शुभस्पती ॥४॥

हे अश्विनीकुमार हो ! व्याधाले हात्ती र सिंहको आशा गरेझैं तिमीहरूलाई हामी रातदिन हवि र द्रव्यले आह्वान गर्दछौं। हे उत्तम नायक हो ! तिमीहरूका निम्ति यजमान साधकहरू आहुति समर्पित गर्दछन्। तिमीहरू दुवै मानिसका लागि अन्न आदि प्रदान गर्दछौ। तिमीहरू कल्याणकारी उद्देश्यका स्वामी हौ।

युवां ह घोषा पर्यश्विना यती राज्ञ ऊचे दुहिता पृच्छे वां नरा।
भूतं मे अह्न उत भूतमक्तवेऽश्वावते रथिने शक्तमर्वते ॥५॥

हे उपदेशक अश्विनीकुमार हो ! म कक्षीवान्‌की पुत्री घोषा हुँ, तिमीहरूका चारैतिर भ्रमणशील भएर यशोगान गर्दछु। तिमीहरू दुवैका प्रति जिज्ञासु भावना छ। दिनरात मेरो कल्याणका लागि तिमीहरू नित्यकर्ममा सहायक भइदेओ।

युवं कवी ष्ठः पर्यश्विना रथं विशो न कुत्सो जरितुर्नशायथ।
युवोर्ह मक्षा पर्यश्विना मध्वासा भरत निष्कृतं न योषणा ॥६॥

हे सम्पूर्ण ज्ञानले सम्पन्न अश्विनीकुमार हो ! तिमीहरू दुवै रथमा आरुढ छौ। कुत्सझैं स्तुतिकर्ताका घरमा रथबाट तिमीहरू विराजमान हुन पुग्दछौ। हे अश्विनीकुमार हो ! तिमीहरूसित प्रचुर मात्रामा मधु छ। नारीजस्ता माहुरीले त्यो मुखमा राख्दछन्।

युवं ह भुज्युं युवमश्विना वशं युवं शिञ्जारमुशनामुपारथुः।
युवो ररावा परि सख्यमासते युवोरहमवसा सुम्नमा चके ॥७॥

हे अश्विनीकुमार हो ! दुःखद स्थितिमा समुद्रमा खसेका भुज्युलाई तिमीहरूले सुरक्षित गरेका थियौ। तिमीहरूले वश राजा र अत्रिका उत्तम स्तोत्रबाट प्रशंसित भएर उनको उद्धार गरेका थियौ। तिमीहरूको मित्रता दानीले प्राप्त गर्न सक्दछन्। तिमीहरूका संरक्षणमा प्राप्त हुने सुखशान्तिको अभिलाषा घोषाले पनि गरेकी छिन्।

युवं ह कृशं युवमश्विना शयुं युवं विधन्तं विधवामुरुष्यथः।
युवं सनिभ्यः स्तनयन्तमश्विनाप व्रजमूर्णुथः सप्तास्यम् ॥८॥

हे अश्विनीकुमार हो ! तिमीहरूले आफ्ना सहायक कृश ऋषि, शंयु र विधवा नारीलाई संरक्षित गरेका थियौ। यज्ञ सम्पन्न गर्नेका लागि तिमीहरू नै बादल खुला गराउँछौ। त्यहाँबाट ध्वनिसँगै पानी बर्सन्छ।

जनिष्ट योषा पतयत्कनीनको वि चारुहन्वीरुधो दंसना अनु।
आस्मै रीयन्ते निवनेव सिन्धवोऽस्मा अह्ने भवति तत्पतित्वनम् ॥९॥

हे अश्विनीकुमार हो ! तिमीहरूका सामर्थ्यले घोषा नारीलक्षणले युक्त सौभाग्यवती भइन्। रोजेको गतिलो वर उनलाई प्राप्त भयो। तिमीहरूका कृपाको वर्षाबाट काम लाग्ने वनस्पतिले हरियाली भरियो। ओरालोतिर तिमीहरूले बगाएका नदीहरू प्रवाहमान छन्। यी सबैलाई सामर्थ्य र आरोग्य लाभ भयो।

जीवं रुदन्ति वि मयन्ते अध्वरे दीर्घामनु प्रसितिं दीधियुर्नरः।
वामं पितृभ्यो य इदं समेरिरे मयः पतिभ्यो जनयः परिष्वजे ॥१०॥

हे अश्विनीकुमार हो ! आफ्नी पत्नीको जीवन सुरक्षा गर्नका लागि रुन सक्ने पुरुषलाई यज्ञ आदि सत्कर्ममा नियोजित गर्दछौ। गर्भाधान आदि संस्कारले सन्तान उत्पादन गरेर पितृयज्ञमा लगाउँछौ। तिनका स्त्रीहरू उनलाई सुख र सहयोग प्रदान गर्दछन्।

न तस्य विद्म तदु षु प्र वोचत युवा ह यद्युवत्याः क्षेति योनिषु।
प्रियोस्रियस्य वृषभस्य रेतिनो गृहं गमेमाश्विना तदुश्मसि ॥११॥

हे अश्विनीकुमार हो ! युवा पतिले युवा पत्नीबाट प्राप्त गर्ने सुखबाट म अपरिचित छु। तिमीहरू नै त्यस सुखको वर्णन गर्दछौ। पत्नीलाई माया गर्ने स्वस्थ र बलिष्ठ पतिका घरमा पुग्न पाऊँ भन्ने मलाई रहर छ।

आ वामगन्तुमतिर्वाजिनीवसू न्यश्विना हृत्सु कामा अयंसत।
अभूतं गोपा मिथुना शुभस्पती प्रिया अर्यम्णो दुर्यां अशीमहि ॥१२॥
हे अन्न र ऐश्वर्ययुक्त अश्विनीकुमार हो ! हामीप्रति तिमीहरू कृपादृष्टि बनाओ। हाम्रा मनको इच्छा पूर्ति गर्नमा सहायता गर। तिमीहरू हाम्रा लागि कल्याणकारी छौ। हामी आफ्ना पतिका प्रेमपात्र बनेर उनको घर सजाउन सकौं।
ता मन्दसाना मनुषो दुरोण आ धत्तं रयिं सहवीरं वचस्यवे।
कृतं तीर्थं सुप्रपाणं शुभस्पती स्थाणुं पथेष्ठामप दुर्मतिं हतम् ॥१३॥
हे अश्विनीकुमार हो ! तिमीहरू प्रार्थनाले प्रशंसित भएर मेरा पतिको घर, ऐश्वर्य र सन्तानले परिपूर्ण गराओ। हे कल्याणकारी अश्विनीकुमार हो ! हामीलाई सुखपूर्वक प्रयोग गर्न सक्ने जल प्रदान गर। हाम्रो पतिका घरमा जाने मार्गमा दुष्ट, विघ्न उपस्थित भए, त्यसको निवारण गर।
क्व स्विदद्य कतमास्वश्विना विक्षु दस्रा मादयेते शुभस्पती।
क ईं नि येमे कतमस्य जग्मतुर्विप्रस्य वा यजमानस्य वा गृहम् ॥१४॥
हे दर्शनीय र कल्याणकारी अश्विनीकुमार हो ! हिजोआज तिमीहरू कहाँ, कसका घरमा खुसियाली मनाउँदै आफूलाई सन्तुष्ट गराइरहेका छौ ? कुन यजमान तिमीहरू दुवैलाई बाँधेर राख्नका लागि समर्थ होला र ? तिमीहरू कुन ज्ञानवान् यजमानका घरमा गएका छौ ?

## [सूक्त - ४१]

ऋषि - सुहस्त्य घौषेय। देवता - अश्वनीकुमार। छन्द - जगती।

समानमु त्यं पुरुहूतमुक्थ्यं१ रथं त्रिचक्रं सवना गनिग्मतम्।
परिज्मानं विदथ्यं सुवृक्तिभिर्वयं व्युष्टा उषसो हवामहे ॥१॥
हे अश्विनीकुमार हो ! तिमीहरू दुवैसित एउटै रथ छ। त्यस उत्तम रथको स्तुति गर्दै अनेकौं मानिस आह्वान गर्छन्। त्यस यज्ञमा जाने रथ तीन पाङ्ग्रा भएको छ। चारैतिर विचरण गर्दै त्यसले यज्ञ सफल बनाउँछ। प्रत्येक दिन बिहान हामी उत्तम स्तुतिले त्यसै रथलाई आह्वान गर्दछौं।
प्रातर्युजं नासत्याधि तिष्ठथः प्रातर्यावाणं मधुवाहनं रथम्।
विशो येन गच्छथो यज्वरीर्नरा कीरेश्चिद्यज्ञं होतृमन्तमश्विना ॥२॥
हे सत्यनिष्ठ र नायक अश्विनीकुमार हो ! तिमीहरू बिहानीपख नै मधु वहन गर्न अश्व नारिएका रथमा विराजमान होओ। त्यसैमा यज्ञशील यजमानकहाँ जाओ। त्यसले तिमीहरूलाई प्रार्थना गर्नेहरूका होतृयुक्त यज्ञमा तिमीहरू पनि सहभागी होओ।
अध्वर्युं वा मधुपाणिं सुहस्त्यमग्निधं वा धृतदक्षं दमूनसम्।
विप्रस्य वा यत्सवनानि गच्छथोऽत आ यातं मधुपेयमश्विना ॥३॥
हे अश्विनीकुमार हो ! हातमा मधु धारण गरेका अध्वर्यु, सुहस्त अथवा अग्निध नामका जितेन्द्रिय ऋत्विक् दानका भावनाले प्रेरित हुँदा तिमीहरू दुवै तिनका नजिक पुग। तिमीहरू सधैं विद्वान्, ज्ञानी यजमानका यज्ञमा जान्छौ। मधुपान गर्नका लागि हाम्रा घरमा पनि अवश्य आओ।

## [सूक्त - ४२]

ऋषि - कृष्ण आङ्गिरस। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

अस्तेव सु प्रतरं लायमस्यन्भूषन्निव प्र भरा स्तोममस्मै।
वाचा विप्रास्तरत वाचमर्यो नि रामय जरितः सोम इन्द्रम् ॥१॥
धनुर्धारीले लक्ष्यमा लाग्ने खालका बाण प्रहार गरेझैं वा गहनाले पुरुष सजिएझैं इन्द्रदेवका लागि स्तुति प्रयोग गरौं। हे ज्ञानी मानिस हो ! प्रतिस्पर्धा गर्नेहरूका लागि यस्तै स्तुति प्रयोग गरौं र त्यसबाट उनीहरू पराजित होऊन्। हे स्तोता हो ! पराक्रमी इन्द्रदेवलाई सोमपानतर्फ आकर्षित गर।

दोहेन गामुप शिक्षा सखायं प्र बोधय जरितर्जारमिन्द्रम्।
कोशं न पूर्णं वसुना न्यृष्टमा च्यावय मघदेयाय शूरम् ॥२॥
हे स्तुतिकर्ता ! गाई दुहेर आफ्नो प्रयोजन पूरा गरेझैं मित्रस्वरूपका इन्द्रदेवसित आफ्नो अभीष्ट फल उपलब्ध गर। प्रशंसाका लागि योग्य इन्द्रदेवलाई जागृत गर। मानिसले अन्न भरिएको भाँडो मुखतल राखेर त्यसबाट अन्न निकालेझैं शूरवीर इन्द्रदेवलाई अभीष्ट सिद्धिका लागि अनुकूल बनाओ।

किमङ्ग त्वा मघवन्भोजमाहुः शिशीहि मा शिशयं त्वा शृणोमि।
अप्नस्वती मम धीरस्तु शक्र वसुविदं भगमिन्द्रा भरा नः ॥३॥

हे वैभवशाली इन्द्रदेव ! ज्ञानीहरू तिमीलाई कामना पूरा गराउने किन भन्दछन् ? हामीलाई तिमी धनले सम्पन्न बनाऊ। तिमीलाई हामी प्रोत्साहित गराउने मान्दछौँ। हे इन्द्रदेव ! हाम्रो विवेकबुद्धि कार्यकुशलताले सम्पन्न गराऊ। हामीलाई श्रेष्ठ ऐश्वर्य र सम्पदाले सौभाग्ययुक्त गराऊ।

त्वां जना ममसत्येष्विन्द्र सन्तस्थाना वि ह्वयन्ते समीके।
अत्रा युजं कृणुते यो हविष्मान्नासुन्वता सख्यं वष्टि शूरः ॥४॥

हे इन्द्रदेव ! योद्धा समरभूमिमा जाँदा सहयोगका तिम्ति तिम्रो स्मरण गर्दछन्। ती साधक युद्धमा वीरको सहायता गर्दछन्। इन्द्रका लागि सोम प्रस्तुत नगर्ने वीरहरू इन्द्रका मैत्री भावनाबाट वञ्चित हुन्छन्।

धनं न स्पन्द्रं बहुलं यो अस्मै तीव्रान्त्सोमाँ आसुनोति प्रयस्वान्।
तस्मै शत्रून्तसुतुकान्प्रातरह्नो नि स्वष्ट्रान्युवति हन्ति वृत्रम् ॥५॥

हविष्यान्नले युक्त यजमान असङ्ख्य गाई, अश्व आदि प्रदान गर्ने वैभवशालीको जस्तै उदार हृदयले इन्द्रदेवलाई सोमरस चाँडै समर्पित गर्दछन्। उनले इन्द्रदेवको सहयोग प्राप्त गर्दछन्। वृत्र वध गर्ने इन्द्रदेव सामर्थ्यवान् र अनेकौँ आयुधले युक्त सैन्यदल भएका यजमानका शत्रु चाँडै परास्त गराउँदै विघ्नकारी असुर विनाश गर्दछन्।

यस्मिन्वयं दधिमा शंसमिन्द्रे यः शिश्राय मघवा काममस्मे।
आराच्चित्सन्भयतामस्य शत्रुर्न्यस्मै द्युम्ना जन्या नमन्ताम् ॥६॥

हामी स्तोत्रले इन्द्रदेवको प्रार्थना गर्दछौँ र ऐश्वर्यवान् इन्द्रदेवले हामीलाई अभीष्ट ऐश्वर्य प्रदान गर्दछन्। उनका अगाडिबाट शत्रु भयभीत भएर भाग्दछन्। त्यसपछि शत्रुपक्षको ऐश्वर्यसम्पदा इन्द्रदेवलाई उपलब्ध हुन्छ।

आराच्छत्रुमप बाधस्व दूरमुग्रो यः शम्बः पुरुहूत तेन।
अस्मे धेहि यवमद्गोमदिन्द्र कृधी धियं जरित्रे वाजरत्नाम् ॥७॥

हे इन्द्रदेव ! असङ्ख्य साधक तिमीलाई आमन्त्रित गर्दछन्। तिम्रो वज्र नामको अस्त्र धारिलो छ। त्यसले हाम्रा नजिकका शत्रु लखेट्दै पर पुऱ्याएर अन्न, जौ र गाई आदिले युक्त सम्पदा प्रदान गर। स्तुतिकर्ताको प्रार्थना, अन्न एवं रत्न उत्पादक बनाऊ।

प्र यमन्तर्वृषसवासो अग्मन्तीव्राः सोमा बहुलान्तास इन्द्रम्।
नाह दामानं मघवा नि यंसन्नि सुन्वते वहति भूरि वामम् ॥८॥

खरो सोमरस मधुररसका रूपमा विभिन्न धाराले झर्दै इन्द्रदेवका शरीरमा प्रवेश गर्दा वैभवसम्पन्न इन्द्रदेव सोमरस प्रदान गर्ने यजमानको विरोध गर्दैनन्, बरु सोमरस प्रस्तुत गर्नेलाई प्रचुर मात्रामा सम्पत्ति प्रदान गर्दछन्।

उत प्रहामतिदीव्या जयाति कृतं यच्छ्वघ्नी विचिनोति काले।
यो देवकामो न धना रुणद्धि समित्तं राया सृजति स्वधावान् ॥९॥

हारेको जुवाडेले जितेका जुवाडेलाई खोजेर आफूले पहिले हारेको बदला लिन पराजित गरेझैँ अनिष्टकारी शत्रुमाथि इन्द्रदेव पनि पराक्रमी हमला गरेर पराजित गराउँछन्। देवपूजनमा आर्थिक कन्जुस्याइँ नगर्ने साधकलाई ऐश्वर्यवान् इन्द्रदेव धनसम्पदाले सम्पन्न बनाउँछन्।

गोभिष्टरेमामतिं दुरेवां यवेन क्षुधं पुरुहूत विश्वाम्।
वयं राजभिः प्रथमा धनान्यस्माकेन वृजनेना जयेम ॥१०॥

हे धेरै तिरबाट बोलाइने इन्द्रदेव ! तिम्रा कृपादृष्टिले हामी गाईरूपी धनद्वारा दुःख र दरिद्रताबाट निवृत्त होऔँ। जौ आदि अन्नले भोक शान्त गराऔँ। हामी शासनका अधिकारीसँग अगाडि बढेर आफ्नो सामर्थ्य र क्षमताले शत्रुको विपुल सम्पदामा आफ्ना आधिपत्यमा लिन सकौँ।

बृहस्पतिर्नः परि पातु पश्चादुतोत्तरस्मादधरादघायोः।
इन्द्रः पुरस्तादुत मध्यतो नः सखा सखिभ्यो वरिवः कृणोतु ॥११॥

दुष्ट, पापी शत्रुबाट बृहस्पतिले हामीलाई पश्चिम, उत्तर र दक्षिणबाट संरक्षित गरुन्। इन्द्रदेवले पूर्व दिशा र मध्य भागबाट आउने शत्रुबाट हामीलाई संरक्षित गराऊन्। ती इन्द्रदेव सबैका मित्र हुन् र हामी पनि उनका प्रिय सखा हौँ। उनै इन्द्रदेवले हाम्रो इच्छा पूरा गराऊन्।

[सूक्त - ४३]

ऋषि - कृष्ण आङ्गिरस। देवता - इन्द्र। छन्द - जगती त्रिष्टुप्।

अच्छा म इन्द्रं मतयः स्वर्विदः सध्रीचीर्विश्वा उशतीरनूषत।
परि ष्वजन्ते जनयो यथा पतिं मर्यं न शुन्ध्युं मघवानमूतये ॥१॥

पवित्र, आत्मशक्ति वृद्धि गराउने, सँगसँगै रहने र उन्नतिको कामना गर्ने हाम्रो स्तुतिले ऐश्वर्यवान् इन्द्रलाई आश्रय पाउनका लागि स्त्रीले पतिलाई अँगालेझैं घेर्दछ।

न घा त्वद्रिगप वेति मे मनस्त्वे इत्कामं पुरुहूत शिश्रय।
राजेव दस्म नि षदोऽधि बर्हिष्यस्मिन्त्सु सोमेऽवपानमस्तु ते ॥२॥

हे असङ्ख्य तिरबाट स्तुति गर्न योग्य इन्द्रदेव ! तिमीलाई छोडेर हाम्रो मन अर्कोतिर जाँदैन। हामी आफ्नो रहर तिमीमा नै केन्द्रित गर्दछौं। राजा राजसिंहासनमा बसेझैं तिमी कुशको आसनमा प्रतिष्ठित होऊ। तिम्रो श्रेष्ठ सोमरस पिउने इच्छा पूरा होस्।

विषूवृदिन्द्रो अमतेरुत क्षुधः स इद्रायो मघवा वस्व ईशते।
तस्येदिमे प्रवणे सप्त सिन्धवो वयो वर्धन्ति वृषभस्य शुष्मिणः ॥३॥

हामीलाई दुर्दशायुक्त कुमति र अन्नका अभावबाट संरक्षण प्रदान गर्नका लागि इन्द्रदेव हाम्रा चारैतिर विराजमान होऊन्। ऐश्वर्यवान् इन्द्रदेव नै सबै सम्पदा र धनका अधिपति हुन्। अभीष्टवर्षक र तेजस्वी इन्द्रदेवका निर्देशनमै गङ्गा आदि सात नदीले त्यस देशलाई अन्न आदिद्वारा समृद्ध गराउँछन्।

वयो न वृक्षं सुपलाशमासदन्त्सोमास इन्द्रं मन्दिनश्चमूषदः।
प्रैषामनीकं शवसा दविद्युतद्विदत्स्वर्मनवे ज्योतिरार्यम् ॥४॥

चराले राम्रा पात हुने वृक्षको आश्रय लिएझैं पात्रमा विद्यमान हर्षदायक सोमरस इन्द्रदेवको आश्रय लिन्छ। सोमरसको प्रभाव र तेजले इन्द्रदेवको मुख तेजोमय हुन्छ। इन्द्रदेव आफ्नो सर्वोत्तम तेजस्विता मानिसलाई प्रदान गरून्।

कृतं न श्वघ्नी वि चिनोति देवने संवर्गं यन्मघवा सूर्यं जयत्।
न तत्ते अन्यो अनु वीर्यं शकन्न पुराणो मघवन्नोत नूतनः ॥५॥

जुवाडेले आफूलाई पराजित गर्नेलाई खालमा खोजीकन पराजित गरेझैं वैभवशाली इन्द्रदेव जलवर्षा रोक्ने सूर्यलाई पराजित गराउँछन्। हे ऐश्वर्यवान् इन्द्रदेव ! कुनै पनि पुराना वा नयाँ मानिस तिम्रा पराक्रमसँग प्रतिस्पर्धा गर्न सक्ने हुँदैनन्।

विशंविशं मघवा पर्यशायत जनानां धेना अवचाकशद्वृषा।
यस्याह शक्रः सवनेषु रण्यति स तीव्रैः सोमैः सहते पृतन्यतः ॥६॥

खोजेको कुरो पूरा गराउने इन्द्रदेव सबै मानिसमा स्थित छन्। उनी स्तोताको स्तुति ध्यानपूर्वक सुन्दछन्। इन्द्रदेव खुसी हुने यजमानका सोमयागमा खरो सोमरसले युद्ध रोज्ने शत्रु पराजित गराउन सक्षम हुन्छन्।

आपो न सिन्धुमभि यत्समक्षरन्त्सोमास इन्द्रं कुल्या इव ह्रदम्।
वर्धन्ति विप्रा महो अस्य सादने यवं न वृष्टिर्दिव्येन दानुना ॥७॥

स्वाभाविक रूपले सागरतिर नदी प्रवाहित भएझैं र सानातिना खोलानाला पोखरीतिर बगेझैं सोमरस सहजताका साथ इन्द्रदेवलाई नै प्राप्त हुन्छ। दिव्य वर्षा गराउने पर्जन्यले जौको खेती बढाएझैं इन्द्रदेवको महिमाले ज्ञानीहरूका यज्ञस्थल बढाउँछन्।

वृषा न क्रुद्धः पतयद्रजःस्वा यो अर्यपत्नीरकृणोदिमा अपः।
स सुन्वते मघवा जीरदानवेऽविन्दज्ज्योतिर्मनवे हविष्मते ॥८॥

रिसाएको साँढेले अर्को साँढे लखेट्दै कुदेझैं इन्द्रदेव रिसाएर मेघतिर कुद्छन्। मेघलाई फुटाएर त्यसमा आश्रित वृष्टिको जल हाम्रा लागि मुक्त गराउँछन्। ऐश्वर्यवान् इन्द्रदेव सोम-अर्पण गर्ने, दानी र हविष्यान्न समर्पित गर्ने यजमानलाई तेज प्रदान गर्दछन्।

उज्जायतां परशुर्ज्योतिषा सह भूया ऋतस्य सुदुघा पुराणवत्।
वि रोचतामरुषो भानुना शुचिः स्वर्ण शुक्रं शुशुचीत सत्पतिः ॥९॥

इन्द्रदेवको वज्र तेजसँग प्रकट होस्, उहिलेकै जस्तो स्तोत्रवाणी यज्ञमा उत्पन्न होस्। स्वयं

देदीप्यमान इन्द्रदेव तेज र शोभाले युक्त एवं पवित्र होऊन्। सज्जनका पालक इन्द्रदेव सूर्यको जस्तै शुभ्र ज्योतिले प्रकाशमान होऊन्।

**गोभिष्टरेमामतिं दुरेवां यवेन क्षुधं पुरुहूत विश्वाम्।**
**वयं राजभिः प्रथमा धनान्यस्माकेन वृजनेना जयेम ॥१०॥**

हे अनेकौं तिरबाट आह्वान गरिने इन्द्रदेव ! तिम्रा कृपादृष्टिले हामी गाईरूपी धनद्वारा दुःखदारिद्र्यबाट मुक्त होऔं। जौं आदि अन्न भोकमा आपूर्ति गराऔं। शासनका अधिपतिको कृपापात्र भएर आफ्ना सामर्थ्यले शत्रुको विपुल सम्पदा हामी आफ्नो अधिकारमा लिन सकौं।

**बृहस्पतिर्नः परि पातु पश्चादुतोत्तरस्मादधरादघायोः।**
**इन्द्रः पुरस्तादुत मध्यतो नः सखा सखिभ्यो वरिवः कृणोतु ॥११॥**

दुष्ट, पापी शत्रुबाट बृहस्पतिदेवले हामीलाई पश्चिम, उत्तर र दक्षिणबाट रक्षा गरुन्। इन्द्रदेवले पूर्व दिशा र मध्य भागबाट आउने शत्रुबाट हामीलाई संरक्षित गरुन्। इन्द्रदेव सबैका मित्र र हामी उनका प्रिय सखा हौं। उनै इन्द्रदेवले हाम्रो इच्छा पूरा गरुन्।

### [सूक्त - ४४]

**ऋषि** – कृष्ण आङ्गिरस। **देवता** – इन्द्र। **छन्द** – जगती त्रिष्टुप्।

**आ यात्विन्द्रः स्वपतिर्मदाय यो धर्मणा तूतुजानस्तुविष्मान्।**
**प्रत्वक्षाणो अति विश्वा सहांस्यपारेण महता वृष्ण्येन ॥१॥**

इन्द्रदेव शारीरिक रूपमा स्थूल छन् र उनी आफ्ना विशाल तथा पराक्रमी सामर्थ्यले सम्पूर्ण शक्तिशाली पदार्थलाई शक्तिहीन गराउँछन्। ती ऐश्वर्यसम्पन्न इन्द्रदेव रथमा आरुढ भएर यहाँ आई हर्ष प्राप्त गरुन्।

**सुष्ठामा रथः सुयमा हरी ते मिम्यक्ष वज्रो नृपते गभस्तौ।**
**शीभं राजन्त्सुपथा याह्यर्वाङ् वर्धाम ते पपुषो वृष्ण्यानि ॥२॥**

हे मनुष्यका पालक इन्द्रदेव ! तिम्रो रथ उत्तम रीतिले बनेको छ, तिम्रा रथका दुवै अश्व राम्रोसित सदाइएका छन् र तिमी हातमा वज्र लिएका छौ। हे अधिकारले सम्पन्न इन्द्रदेव सुशोभित भएर सजिलो मार्गबाट शीघ्र हाम्रा नजिकै आऊ। तिम्रो सेवाका लागि सोमरस प्रस्तुत छ। त्यो पान गराएर हामी तिम्रो सामर्थ्य बढाइदिनेछौं।

**एन्द्रवाहो नृपतिं वज्रबाहुमुग्रमुग्रासस्तविषास एनम्।**
**प्रत्वक्षसं वृषभं सत्यशुष्ममेमस्मत्रा सधमादो वहन्तु ॥३॥**

मानिसका पालक, हातमा वज्र लिएका, शत्रुको सैन्यबल घटाउने, खोजेको कुरो पूरा गराउने र सत्यको नियममा रहेका वीर इन्द्रदेवका रथ बोक्ने उग्र, बलिष्ठ र अति उत्साहित अश्वले उनलाई हामीकहाँ लिएर आऊन्।

**एवा पतिं द्रोणसाचं सचेतसमूर्जः स्कम्भं धरुण आ वृषायसे।**
**ओजः कृष्व सं गृभाय त्वे अप्यसो यथा केनिपानामिनो वृधे ॥४॥**

हे इन्द्रदेव ! सोमरसले शरीर बलियो हुन्छ, त्यो कलशमा मिसिएर बल सञ्चार गराउने खालको भएको छ। त्यस्तो सोमरस तिमी आफूभित्र छिराऊ र हाम्रा सामर्थ्यशक्तिमा वृद्धि गर। हामीलाई आफन्त बनाऊ, किनभने तिमी ज्ञानको खोजी गर्नेहरूलाई धनसम्पदाले समृद्ध पार्ने हौ।

**गमन्नस्मे वसून्या हि शंसिषं स्वाशिषं भरमा याहि सोमिनः।**
**त्वमीशिषे सास्मिन्ना सत्सि बर्हिष्यनाधृष्या तव पात्राणि धर्मणा ॥५॥**

हे इन्द्रदेव ! हामी स्तोतालाई तिमी मनग्गे सम्पदा प्रदान गर। सोमले युक्त हाम्रा यज्ञमा शुभ आशीर्वाद दिन आऊ। किनभने हाम्रा स्वामी तिमी नै हौ। तिमी हाम्रा यज्ञमा कुशका आसनमा विराजमान होऊ। तिमीलाई सेवन गर्न सजिएको सोमपात्र कसैले बलपूर्वक खोस्न सक्ला कि भन्ने आँट कसैले गर्दैन।

**पृथक् प्रायन्प्रथमा देवहूतयोऽकृण्वत श्रवस्यानि दुष्टरा।**
**न ये शेकुर्यज्ञियां नावमारुहमीर्मैव ते न्यविशन्त केपयः ॥६॥**

हे इन्द्रदेव ! असल मानिसहरू उहिलेदेखि नै देवतालाई आमन्त्रित गरिरहेका छन्। उनीहरूले कीर्ति प्रदान गर्ने र दुष्कर कार्य सम्पन्न गर्दै विभिन्न देवलोक प्राप्त गरे। यज्ञ उपासनारूपी नौकामा

चढ्न नपाएका, दुष्कर्मरूपी पापमा फँसेकाहरू ऋणको भारीले थिचिएर दुर्गतिग्रस्त हुँदै दुःख पाइरहन्छन्।

**एवैवापागपरे सन्तु दूढ्योऽश्वा येषां दुर्युज आयुयुज्रे।**
**इत्था ये प्रागुपरे सन्ति दावने पुरूणि यत्र वयुनानि भोजना ॥७॥**

यस बेला जो दुर्बुद्धिले ग्रस्त भएर यज्ञका विरोधी छन्, उसको जीवनरूपी रथमा पतनका मार्गतिर घँच्याउने खालका अश्व नारिएका छन्, तिनीहरू अधोगामी हुन्छन् र नरक पुग्दछन्। पहिलेदेखि नै देवताका निम्ति हविष्यान्न समर्पित गर्न जुटेका जुन मानिसहरू नै वास्तवमा स्वर्गधाम प्राप्त गर्छन्। त्यहाँ प्रचुर मात्रामा अनेकौं किसिमका उपभोग्य सामग्री उपलब्ध छन्।

**गिरीँरज्राँरेजमानाँ अधारयद् द्यौः क्रन्ददन्तरिक्षाणि कोपयत्।**
**समीचीने धिषणे वि ष्कभायति वृष्णः पीत्वा मद उक्थानि शंसति ॥८॥**

इन्द्रदेव सोमपान गरेर आनन्दित हुँदा सबैतिर घुम्दै काँपिरहेको बादल सुस्थिर गराउँछन् र उनी आकाशलाई विचलित गराउँछन्। त्यसपछि बादल गर्जन थाल्छ। विद्युत् र पृथ्वीको आपसी सम्बन्ध त्यसै स्थितिमा धारण गर्दै इन्द्रदेव उत्तम वचन बोल्दछन्।

**इमं बिभर्मि सुकृतं ते अङ्कुशं येनारुजासि मघवञ्छफारुजः।**
**अस्मिन्त्सु ते सवने अस्त्वोक्यं सुत इष्टौ मघवन्बोध्याभगः ॥९॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! तिम्रो यो उत्तम किसिमले बनेको अङ्कुश हामी लिन्छौं। अङ्कुशरूपी स्तोत्रवाणीले हात्तीजस्ता बलिया दुष्टलाई दण्डित गर्दै तिमी उनीहरूलाई नियन्त्रणमा राख्दछौ। हाम्रा सोमयागमा तिमी आएर विराजमान होऊ। हे इन्द्रदेव ! तिमी गतिलो तरिकाले सम्पन्न गरिएका सोमयज्ञमा हाम्रा प्रार्थनामाथि ध्यान देऊ।

**गोभिष्टरेमामतिं दुरेवां यवेन क्षुधं पुरुहूत विश्वाम्।**
**वयं राजभिः प्रथमा धनान्यस्माकेन वृजनेना जयेम ॥१०॥**

हे अनेकौं तिरबाट आह्वान गरिने इन्द्रदेव ! तिम्रा कृपादृष्टिले हामी गाईरूपी धनद्वारा दुःखदारिद्र्यबाट मुक्त होऔं। जौं आदि अन्नले हामी भोक आपूर्ति गराऔं। शासनका अधिपतिको कृपापात्र भएर आफ्ना सामर्थ्यले शत्रुको विपुल सम्पदामा अधिकारमा लिन सकौं।

**बृहस्पतिर्नः परि पातु पश्चादुतोत्तरस्मादधरादघायोः।**
**इन्द्रः पुरस्तादुत मध्यतो नः सखा सखिभ्यो वरिवः कृणोतु ॥११॥**

दुष्ट, पापी शत्रुबाट बृहस्पतिदेवले पश्चिम, उत्तर र दक्षिणबाट हामीलाई रक्षित गरुन्। इन्द्रदेवले पूर्व दिशा र मध्य भागबाट आउने शत्रुबाट हामीलाई रक्षित गरुन्। ती इन्द्रदेव सबैका मित्र हुन् र हामी उनका प्रिय सखा हौं। उनै इन्द्रदेवले हाम्रो इच्छा पूरा गरुन्।

[सूक्त - ४५]

ऋषि - वत्सप्रि भालन्दन। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

**दिवस्परि प्रथमं जज्ञे अग्निरस्मद् द्वितीयं परि जातवेदाः।**
**तृतीयमप्सु नृमणा अजस्रमिन्धान एनं जरते स्वाधीः ॥१॥**

सबैभन्दा पहिले अग्निदेव आकाशमण्डलमा विद्युत्का रूपमा उत्पन्न भए, उनको दोस्रो जन्म जातवेदाका नामले हाम्रा बीच पार्थिव रूपले प्रकट भयो र तेस्रो बडवानलका रूपमा समुद्री जलमा उत्पन्न भए। मानिसका लागि कल्याणकारी अग्निदेव निरन्तर प्रदीप्त रहन्छन्। ध्यान गर्नमा कुशलहरूले उनै अग्निदेवको प्रार्थना गर्दछन्।

**विद्मा ते अग्ने त्रेधा त्रयाणि विद्मा ते धाम विभृता पुरुत्रा।**
**विद्मा ते नाम परमं गुहा यद्विद्मा तमुत्सं यत आजगन्थ ॥२॥**

हे अग्निदेव ! हामी तिम्रा तीनै किसिमका स्वरूप जान्दछौं। अनेकौं स्थानमा तिम्रो जुन स्थिति छ, हामी त्यससित पनि परिचित छौं। तिम्रो जुन अति गोप्य र परम श्रेष्ठ नाम छ, हामी त्यससित पनि परिचित छौं। तिम्रो उत्पन्न हुने स्थल जुन हो, त्यस कारणभूत स्थानसित पनि हामी परिचित छौं।

**समुद्रे त्वा नृमणा अप्स्वान्तर्नृचक्षा ईधे दिवो अग्न ऊधन्।**
**तृतीये त्वा रजसि तस्थिवांसमपामुपस्थे महिषा अवर्धन् ॥३॥**

हे अग्निदेव ! मनुष्यका कल्याणकारी वरुणदेवले तिमीलाई समुद्री जलभित्र प्रज्वलित गरेका

छन्। मानिसका निरीक्षक सूर्यदेव तिमीलाई दिव्य स्थानमा प्रज्वलित गर्छन्। तिमी आफ्नो तेस्रो स्थान मेघमण्डलमा वर्षा उत्पादन गर्ने विद्युत्का रूपमा छौ। मुख्य देवताका समूहले स्तुति गर्दै तिम्रो तेज बढाउँछन्।

**अक्रन्ददग्निः स्तनयन्निव द्यौःक्षमा रेरिहद्वीरुधः समञ्जन्।**
**सद्यो जज्ञानो वि हीमिद्धो अख्यदा रोदसी भानुना भात्यन्तः ॥४॥**

हे अग्निदेव ! तिमी आकाशमा मेघका बीचमा विद्युत् रूपमा चम्कन्छौ र गर्जना गर्दै पृथ्वी गुञ्जायमान गराउँछौ। प्राणरूपी पर्जन्यका रूपमा बोटबिरुवा अङ्कुरित गर्दछौ। तिमी चाँडै उत्पन्न र प्रज्वलित भएर सबैलाई प्रकाशित गर्दछौ। पृथ्वी र द्युलोकका माझमा विद्युत्का रूपमा सुशोभित हुने तिमी सबैका लागि स्तुत्य छौ।

**श्रीणामुदारो धरुणो रयीणां मनीषाणां प्रार्पणः सोमगोपाः।**
**वसुः सूनुः सहसो अप्सु राजा वि भात्यग्र उषसामिधानः ॥५॥**

उदार सम्पत्तिशाली, ऐश्वर्य धारण गर्ने, मनीषीहरूका प्रेरक, सोमका संरक्षक, धन प्रदायक, बलका पुत्र, जलका स्वामी अग्निदेव उषाभन्दा अगाडि प्रज्वलित भएर शोभायमान हुन्छन्।

**विश्वस्य केतुर्भुवनस्य गर्भ आ रोदसी अपृणाज्जायमानः।**
**वीडुं चिदद्रिमभिनत्परायञ्जना यदग्निमयजन्त पञ्च ॥६॥**

सम्पूर्ण विश्वका प्रकाशक, पानीबाट उत्पन्न अग्निदेव प्रकट हुँदाखेरि नै द्युलोक र भूलोक व्याप्त गर्दछन्। पाँचै वर्णका मानिसले अग्निदेवको अर्चना गर्दा उनी राम्ररी बलियो पर्वतजस्तै बादल भेदन गरेर जलको वर्षा गराउँछन्।

**उशिक्पावको अरतिः सुमेधा मर्तेष्वग्निरमृतो नि धायि।**
**इयर्ति धूममरुषं भरिभ्रदुच्छुक्रेण शोचिषा द्यामिनक्षन् ॥७॥**

देख्दैखेरि ज्योतिष्मान् अग्निदेवको दीप्ति महान् छ। उनी अदम्य प्राणयुक्त प्रकाशले शोभायमान हुन्छन्। उनी अन्न र वनस्पति पाएर अमर हुन्छन्। अग्निको जन्मदाता र द्युलोकको उत्पादक शक्ति विचित्र रमाइलो छ।

**दृशानो रुक्म उर्विया व्यद्यौद्दुर्मर्षमायुः श्रिये रुचानः।**
**अग्निरमृतो अभवद्वयोभिर्यदेनं द्यौर्जनयत्सुरेताः ॥८॥**

समस्त पदार्थ प्रकाशित गर्ने तेजस्वी सूर्यदेव यस लोकमा सहज दर्शनीय भएझैं र विभिन्न प्रकारले धनऐश्वर्य बढाउँदै शोभायमान भएझैं अग्निदेव श्रेष्ठ, शक्तिसम्पन्न, अमृतस्वरूप, दुःखनाशक र आयुसंवर्द्धक हुन्। देवताले यिनलाई प्रकट गरेका हुन्।

**यस्ते अद्य कृणवद्भद्रशोचेऽपूपं देव घृतवन्तमग्ने।**
**प्र तं नय प्रतरं वस्यो अच्छाभि सुम्नं देवभक्तं यविष्ठ ॥९॥**

हे मङ्गलमय ज्योतिस्वरूप अग्निदेव ! तिमीलाई घिउयुक्त पुरोडाश समर्पित गर्ने श्रेष्ठ याज्ञिकलाई तिमी श्रेष्ठ ऐश्वर्य प्रदान गर। देवताका उपासक र हविष्य समर्पित गर्ने साधकलाई सबै किसिमका सुखसौभाग्यतर्फ लैजाऊ।

**आ तं भज सौश्रवसेष्वग्न उक्थउक्थ आ भज शस्यमाने।**
**प्रियः सूर्ये प्रियो अग्ना भवात्युज्जातेन भिनददुज्जनित्वैः ॥१०॥**

हे अग्निदेव ! श्रेष्ठ अन्नले शास्त्रोक्त क्रियाकलाप सम्पादित गर्ने यजमानलाई श्रेष्ठ अभीष्ट फल प्रदान गर्दछौ। स्तुतियोग्य तिमी प्रत्येक स्तोत्रमा उनीहरूलाई अभीष्ट फल प्रदान गर। स्तुतिकर्ता यजमान सूर्य र अग्निदेवका प्रियपात्र होऊन्। पुत्रपौत्रादि सन्तानका साथै उनीहरूका शत्रु संहार गरिदेऊ।

**त्वामग्ने यजमाना अनु द्यून्विश्वा वसु दधिरे वार्याणि।**
**त्वया सह द्रविणमिच्छमाना व्रजं गोमन्तमुशिजो वि वव्रुः ॥११॥**

हे अग्निदेव ! तिम्रा साधक नित्य सबै किसिमका श्रेष्ठतम पूजन सामग्री तिम्रा निमित्त समर्पित गर्छन्। तिमीसित गाईरूपी धनको आकाङ्क्षाले प्रेरित देवताजस्ता ज्ञानीले गाईले परिपूर्ण गोठको ढोका तिम्रा लागि खोलिदिएका छन्।

अस्ताव्यग्निर्नरां सुशेवो वैश्वानर ऋषिभिः सोमगोपाः।
द्वेषे द्यावापृथिवी हुवेम देवा धत्त रयिमस्मे सुवीरम् ॥१२॥

मानिसहरूमा अग्निदेवको सुन्दर आभा स्थित छ र सोम संरक्षक पनि उनै हुन्। उनै अग्निदेवको स्तुति ऋषिहरूले गर्छन्। विद्वेषको भावनारहित द्यावापृथिवीलाई हामो आह्वान गर्दछौं। हे देवता हो ! हामीलाई श्रेष्ठ वीर सन्तानयुक्त ऐश्वर्य प्रदान गर।

[सूक्त - ४६]

ऋषि - वत्सप्रि भालन्दन। देवता - अग्नि। छन्द - त्रिष्टुप्।

प्र होता जातो महान्नभोविन्नृषद्मा सीददपामुपस्थे।
दधिर्यो धायि स ते वयांसि यन्ता वसूनि विधते तनूपाः ॥१॥

मानव र मेघका बीचमा विद्युत्का रूपमा यज्ञका अग्नि प्रतिष्ठित छन्। राम्रोसित प्रतिष्ठित अग्निदेव उपासकलाई अन्न प्रदान गर्ने र शरीरका संरक्षक सिद्ध हुन्छन्।

इमं विधन्तो अपां सधस्थे पशुं न नष्टं पदैरनु ग्मन्।
गुहा चतन्तमुशिजो नमोभिरिच्छन्तो धीरा भृगवोऽविन्दन् ॥२॥

चोरी भएको पशु पदचिह्न पछ्याएर खोजिएझैं जलतत्त्वका बीचमा गुप्त भई बसेका अग्निलाई अनुसन्धानमा लागेका, तपस्वी र ज्ञानवान् भृगुवंशीले स्तोत्रद्वारा फेला पारे।

इमं त्रितो भूर्यविन्ददिच्छन्वैभूवसो मूर्धन्यघ्न्यायाः।
शेवृधो जात आ हर्म्येषु नाभिर्युवा भवति रोचनस्य ॥३॥

महान् अग्निदेवलाई खोज्ने विभूवसुका पुत्र त्रित ऋषिले भूमिमा अग्नि उपलब्ध गरे। सुख प्रदान गर्ने अग्निदेव यजमानका यज्ञस्थलमा प्रकट भए। ती देवता प्रकाशवान् पदार्थका केन्द्र हुन्।

मन्द्रं होतारमुशिजो नमोभिः प्राञ्चं यज्ञं नेतारमध्वराणाम्।
विशामकृण्वन्नरतिं पावकं हव्यवाहं दधतो मानुषेषु ॥४॥

आनन्दरूप, सबैका सुखदायक, अति स्तुत्य, यजनीय, यज्ञका प्रतिरूप, तीव्र गतिशील, पवित्रकर्ता, हविवाह र मनुष्यका श्रेष्ठ अधिपतिजस्तो गुणले सुशोभित अग्निदेवलाई खोजी गर्ने ऋत्विक्हरूले प्रार्थनाले खुसी पारे।

प्र भूर्जयन्तं महां विपोधां मूरा अमूरं पुरां दर्माणम्।
नयन्तो गर्भं वनां धियं धुर्हिरिश्मश्रुं नार्वाणं धनर्चम् ॥५॥

हे स्तोता हो ! पशुका विजेता, महिमायुक्त र ज्ञानीलाई धारण गर्ने अग्निदेवको स्तुति गर्न योग्य होओ। सबै ज्ञानी मानिस शत्रुको सहर विनाशक, गर्भमा झैं अरणीभित्र रहने, प्रशंसनीय, हरियो आभायुक्त, तेजस्वी ज्वालायुक्त र स्तुतिप्रेमी अग्निदेवलाई हविष्यान्न समर्पित गरेर आफ्नो अभीष्ट फल उपलब्ध गर्दछन्।

नि पस्त्यासु त्रितः स्तभूयन्परिवीतो योनौ सीददन्तः।
अतः सङ्गृभ्या विशां दमूना विधर्मणायन्त्रैरीयते नॄन् ॥६॥

गार्हपत्य आदि तीन रूप भएका, यजमानको घर सुस्थिर गर्ने अग्निदेव ज्वालाभित्र व्याप्त भएर यज्ञस्थलमा आफ्नो वेदिकामाथि प्रतिष्ठित हुन्छन्। अग्निदेव, प्रजाले दिएको आहुति लिएर, यजमानका निमित्त दानदाता बनेर र प्रजाका लागि नै शत्रुको विनाश गर्दै देवताका नजिक जान्छन्।

अस्याजरासो दमामरित्रा अर्चद्धूमासो अग्नयः पावकाः।
श्वितीचयः श्वात्रासो भुरण्यवो वनर्षदो वायवो न सोमाः ॥७॥

यजमान, साधक अग्निले युक्त हुन्छन्। अग्निदेव नयुढिने, शत्रुका दमनकर्ता, वन्दनीय, धुवाँरूपी ज्वालायुक्त, पवित्रस्वरूप, उज्ज्वल वर्णका, शीघ्र सहायक, पोषणकर्ता, वनमा आश्रित, वायुसमान उत्साहप्रद र सोमसमान फलदायी हुन्छन्।

प्र जिह्वया भरते वेपो अग्निः प्र वयुनानि चेतसा पृथिव्याः।
तमायवः शुचयन्तं पावकं मन्द्रं होतारं दधिरे यजिष्ठम् ॥८॥

अग्निदेव ज्वालारूपी जिह्वाले आफ्ना सुकर्मको निर्वाह गर्ने र प्रकृतिको संरक्षण गर्नका लागि अनुकूलतापूर्वक स्तोत्र धारण गर्ने हुँदा प्रगतिशील मानिस ती तेजस्वी, परम पवित्रकर्ता, स्तवनीय, होता र यजनीय अग्निदेवलाई प्रतिष्ठित गर्दछन्।

द्यावा यमग्निं पृथिवी जनिष्टामापस्त्वष्टा भृगवो यं सहोभिः।
ईडेन्यं प्रथमं मातरिश्वा देवास्ततक्षुर्मनवे यजत्रम् ॥९॥

द्यावापृथिवीले उत्पन्न गरेका, भृगुवंशीले स्तोत्र आदि साधनले उपलब्ध गरेका, त्वष्टादेवले जलबाट उत्पन्न गरेका, मातरिश्वा वायुले प्रमुख स्तुतियोग्य र अन्य सम्पूर्ण देवताले मानिसको यज्ञका लागि स्वीकार गरेका देवता अग्निदेव नै हुन्।

यं त्वा देवा दधिरे हव्यवाहं पुरुस्पृहो मानुषासो यजत्रम्।
स यामन्नग्ने स्तुवते वयो धाः प्र देवयन्यशसः सं हि पूर्वीः ॥१०॥

हे हव्यवाहक अग्निदेव ! देवताहरूले तिमीलाई धारण गरेका छन्। अभिलाषायुक्त मानिसले यज्ञीय कार्यका लागि तिमीलाई स्वीकार गरेका छन्। हे अग्निदेव ! तिमी यज्ञमा हामी स्तोताका लागि अन्न आदि प्रदान गर। देवताको आराधना गर्ने यजमान तिम्रा कृपाले यशस्वी बन्दछन्।

[सूक्त - ४७]

**ऋषि** – सप्तगु आङ्गिरस। **देवता** – इन्द्र वैकुण्ठ। **छन्द** – त्रिष्टुप्।

जगृभ्मा ते दक्षिणमिन्द्र हस्तं वसूयवो वसुपते वसूनाम।
विद्मा हि त्वा गोपतिं शूर गोनामस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥१॥

हे सम्पत्तिवान्, शूरवीर, वृत्रहन्ता इन्द्रदेव ! ऐश्वर्यको कामनाले हामी तिम्रा दाहिने हातको आश्रय लिन्छौं। तिमी गाईका स्वामी हौ। तिमी हाम्रा नानाभाँतिका कामना पूर्ण गराउने खालको वैभव हामीलाई प्रदान गर।

स्वायुधं स्ववसं सुनीथं चतुः समुद्रं धरुणं रयीणाम्।
चर्कृत्यं शंस्यं भूरिवारमस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥२॥

सुन्दर, वज्र आदि अस्त्रले सजिएका, श्रेष्ठ, संरक्षक, सुन्दर नेत्र भएका, चारै समुद्रमा जल परिपूर्ण गराउने, धन धारण गर्ने, बारम्बार धनको व्यवस्थापनमा लाग्ने, स्तुत्य र दुःखकष्ट निवारक हे इन्द्रदेव ! हामीलाई सुखदायक र विलक्षण ऐश्वर्य प्रदान गर।

सुब्रह्माणं देववन्तं बृहन्तमुरुं गभीरं पृथुबुध्नमिन्द्र।
श्रुतऋषिमुग्रमभिमातिषाहमस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥३॥

हे इन्द्रदेव ! तिमीलाई स्तवनीय, देवताको आराधना गर्ने, महान, अति गम्भीर, सुविस्तृत, अति ज्ञानवान, तेजस्वी र शत्रुसंहारक मान्दछौं। हामीलाई सुखदायक र विलक्षण ऐश्वर्य प्रदान गर।

सनद्वाजं विप्रवीरं तरुत्रं धनस्पृतं शूशुवांसं सुदक्षम्।
दस्युहनं पूर्भिदमिन्द्र सत्यमस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥४॥

हे इन्द्रदेव ! हामी अन्नले सम्पन्न, सर्वोत्तम ज्ञानी, तारणकर्ता, ऐश्वर्ययुक्त, उत्कर्षशील, श्रेष्ठ, शक्तिमान्, शत्रुसंहारक, शत्रुको सहर विध्वंस गर्ने र सत्य कर्मनिष्ठ भनेर स्वीकार गर्दछौं। हामीलाई सन्तानसहित सुखदायक र विलक्षण ऐश्वर्य प्रदान गर।

अश्वावन्तं रथिनं वीरवन्तं सहस्रिणं शतिनं वाजमिन्द्र।
भद्रव्रातं विप्रवीरं स्वर्षामस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥५॥

हे इन्द्रदेव ! तिमीलाई हामी अश्वले सम्पन्न, रथ र शूरवीर योद्धाले युक्त, सयौं वा हजारौं गाई एवं सहायकले युक्त, अन्न आदिले युक्त, हितैषि सेवकले युक्त, अति श्रेष्ठ वीर र सबै किसिमका सुख प्रदान गर्नेका रूपमा स्वीकार गर्दछौं। हामीलाई तिमी सन्तानसहित सुखदायक ऐश्वर्य प्रदान गर।

प्र सप्तगुमृतधीतिं सुमेधां बृहस्पतिं मतिरच्छा जिगाति।
य आङ्गिरसो नमसोपसद्योऽस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥६॥

सत्य कर्ममा लागेका, श्रेष्ठ, मेधावी, मन्त्रविद्याका विशेषज्ञ, अङ्गिराका वंशज म सप्तगुलाई उत्तम खालको सद्ज्ञानयुक्त सुमति प्राप्त होस्। म नमस्कार गर्दै देवताको अनुग्रह प्राप्त गर्नका लागि उनीहरूका निकट जान्छु। मलाई सन्तानसहित सुखदायक र विलक्षण ऐश्वर्य प्रदान गर।

वनीवानो मम दूतास इन्द्रं स्तोमाश्चरन्ति सुमतीरियानाः।
हृदिस्पृशो मनसा वच्यमाना अस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥७॥

सुन्दर, स्नेहको भावनायुक्त, सद्बुद्धिको अभिलाषाले प्रेरित भएर हाम्रो प्रार्थना दूतको रूपमा इन्द्रदेवका नजिकमा जाऊन्। यो प्रार्थना मन लगाएर रचिएको हुनाले मन छुने किसिमको छ। हामीलाई तिमी सुखदायक र विलक्षण ऐश्वर्य प्रदान गर।

यत्त्वा यामि दद्धि तन्न इन्द्र बृहन्तं क्षयमसमं जनानाम्।
अभि तद् द्यावापृथिवी गृणीतामस्मभ्यं चित्रं वृषणं रयिं दाः ॥८॥

हे इन्द्रदेव ! तिमी हाम्रो अभीष्ट कामना पूर्ति गर। हामीलाई निवासयोग्य, अद्वितीय विशाल गृह प्रदान गर। द्यावापृथिवीले यो कुरो समर्थन गरुन्। हामीलाई तिमी सुखदायक र विलक्षण ऐश्वर्य प्रदान गर।

[सूक्त - ४८]

ऋषि - इन्द्र वैकुण्ठ। देवता - इन्द्र वैकुण्ठ। छन्द - जगती त्रिष्टुप।

अहं भुवं वसुनः पूर्व्यस्पतिरहं धनानि सं जयामि शश्वतः।
मां हवन्ते पितरं न जन्तवोऽहं दाशुषे वि भजामि भोजमम् ॥१॥

म इन्द्रदेव नै ऐश्वर्यको अधिपति हुँ र असङ्ख्य शत्रुको धनमाथि एकै चोटि आधिपत्य जमाउनमा सक्षम छु। पुत्रले पितालाई बोलाएझैं सम्पूर्ण प्राणीले मलाई गुहार्दछन्। दान गर्ने यजमानलाई म नै अन्न आदि सम्पदा प्रदान गर्दछु।

अहमिन्द्रो रोधो वक्षो अथर्वणस्त्रिताय गा अजनयमहेरधि।
अहं दस्युभ्यः परि नृम्णमा ददे गोत्रा शिक्षन् दधीचे मातरिश्वने ॥२॥

मैले आथर्वण दध्यङ् ऋषिको शिर खसालेको थिएँ। रित्तो कुवाँमा खसेका त्रितको संरक्षण गर्नका लागि बादलबाट वर्षा गराएको थिएँ। शत्रुको धनसम्पत्ति सबै खोसेँ र मातरिश्वाका पुत्र दधीचिका निम्ति जल थुनेर बसेको बादल भत्काएर वर्षा गराएँ।

मह्यं त्वष्टा वज्रमतक्षदायसं मयि देवासोऽवृजन्नपि क्रतुम्।
ममानीकं सूर्यस्येव दुष्टरं मामार्यन्ति कृतेन कर्त्वेन च ॥३॥

त्वष्टादेवले मेरा निमित्त नै फलामको वज्र निर्माण गरे। देवशक्तिले मेरा लागि नै यज्ञकर्म गर्दछन्। मेरो सैन्यशक्ति सूर्यजत्तिकै जितिनसक्नु छ। वृत्र संहार गरेका कारण सबै मेरा नजिकै आउने गर्दछन्।

अहमेतं गव्ययमश्व्यं पशुं पुरीषिणं सायकेना हिरण्ययम्।
पुरू सहस्रा नि शिशामि दाशुषे यन्मा सोमास उक्थिनो अमन्दिषुः ॥४॥

यजमानहरूले सोमरस र स्तुतियुक्त वाणीले मलाई सन्तुष्ट गर्दा म आफ्ना आयुधले शत्रुका अश्व, गाई, हविरूपी द्रव्य र दुधालु पशु जित्दछु। दानी यजमानका शत्रु संहार गर्नका लागि अनेकौं शस्त्र धारिला बनाउँछु।

अहमिन्द्रो न परा जिग्य इद्धनं न मृत्यवेऽव तस्थे कदा चन।
सोममिन्मा सुन्वन्तो याचता वसु न मे पूरवः सख्ये रिषाथन ॥५॥

सबै ऐश्वर्यको स्वामी म इन्द्र नै हुँ। मेरा ऐश्वर्यशाली प्रभुत्वलाई कसैले प्रभावित गर्न सक्दैन। म कहिल्यै पनि मृत्युका अगाडि पराजित हुन्नँ। त्यसैले हे सोमयज्ञ गर्ने यजमान हो ! मनमा लागेको इच्छा र अभीष्ट ऐश्वर्यको कामना मबाट गर। हे मानिस हो ! मप्रति मित्रताको भावना कहिल्यै क्षीण हुन नदेओ।

अहमेताञ्छाश्वसतो द्वाद्वेन्द्रं ये वज्रं युधयेऽकृण्वत।
आह्वयमानाँ अव हन्मनाहनं दृळ्हा वदन्ननमस्युर्नमस्विनः ॥६॥

लामोलामो श्वास फेर्दै हतियार लिएका दुई वटा जुम्ल्याहाजस्ता शत्रु मसित युद्ध गर्ने भावनाले प्रेरित भएर प्रस्तुत भएका थिए। उनीहरूले युद्धका लागि मलाई हाँक दिए। उनीहरूमाथि कठोर शब्द प्रयोग गर्दै मैले कडा प्रहार गर्दा उनीहरू सोझै परलोकतर्फ लागे। उनीहरू नै ढले, म त कसैसित झुक्ने खालको छैनँ।

अभीऽदमेकमेको अस्मि निष्षाळभी द्वा किमु त्रयः करन्ति।
खले न पर्षान् प्रति हन्मि भूरि किं मा निन्दन्ति शत्रवोऽनिन्द्राः ॥७॥

म इन्द्र एउटा मात्रै शत्रु परास्त गर्न सक्षम छु। दुई वटा असह्य शत्रु परास्त गर्नका लागि सक्षम छु भने तीन शत्रु पनि मेरा तुलनामा केही होइनन्। धान रोप्ने बेलामा किसानले सुकेका बोटबिरुवा सजिलै मासेझैं गरी म शत्रु मासिदिन्छु। मेरा विरोधी शत्रुले मेरो निन्दा कसरी गर्न सक्लान् ?

अहं गुङ्गुभ्यो अतिथिग्वमिष्करमिषं न वृत्रतुरं विक्षु धारयम्।
यत्पर्णयघ्न उत वा करञ्जहे प्राहं महे वृत्रहत्ये अशुश्रवि ॥८॥

मैले गङ्गुको देशरक्षाका लागि अतिथिग्वका पुत्र दिवोदासलाई प्रजाका बीचमा अन्नजस्तै भएर संरक्षण गर्न खटाएको थिएँ। म गङ्गुका शत्रुको विनाशक र आपद् निवारक हुँ। पर्णय र करञ्ज नामका शत्रुलाई विध्वंस गर्नाले लडाइँका क्षेत्रमा मेरो ख्याति आर्जन भएको थियो।

प्र मे नमी साप्य इषे भुजे भूद्गवामेषे सख्या कृणुत द्विता।
दिद्युं यदस्य समिथेषु मंहयमादिदेनं शंस्यमुक्थ्यं करम् ॥९॥

मेरा स्तोता सबैका लागि आश्रय प्रदान गर्न सक्ने अन्न उपभोग गर्दछन्। मेरा साधक स्तोतालाई दुनियाँले गाई दान गर्ने र हितैषि मित्रका रूपमा स्वीकार गर्दछन्। म आफ्ना भक्त साधकको विजयश्रीका लागि युद्धभूमिमा हतियार लिने गर्दछु। स्तोतालाई म नै प्रसिद्धि प्रदान गर्दछु।

प्र नेमस्मिन्ददृशे सोमो अन्तर्गोपा नेममाविरस्था कृणोति।
स तिग्मशृङ्गं वृषभं युयुत्सन् द्रुहस्तस्थौ बहुले बद्धो अन्तः ॥१०॥

दुई स्तोतामध्ये एउटा सोमयाग गर्दछ भने संरक्षक, पराक्रमी इन्द्रदेवले त्यस स्तोताका लागि वज्र धारण गर्दछन्। तिखो तेजले युक्त सोम यज्ञसम्पादन गर्नेका विरोधमा सङ्घर्ष गर्नका लागि जो प्रेरित भए उनीहरू अन्धकारमा हराए।

आदित्यानां वसूनां रुद्रियाणां देवो देवानां न मिनामि धाम।
ते मा भद्राय शवसे ततक्षुरपराजितमस्तृतमषाढहम् ॥११॥

आदित्यगण, वसु, मरुत्गण र देवताका स्थान इन्द्रदेव नष्ट गर्दैनन्। ती देवताले हाम्रो कल्याण गरुन्। शक्तिसामर्थ्य प्रदान गर्ने कृपा गरुन्। उनले हामीलाई अपराजेय, साहसी र बलियो बनाइदिऊन्।

[सूक्त - ४९]

ऋषि - इन्द्र वैकुण्ठ। देवता - इन्द्र वैकुण्ठ। छन्द - जगती त्रिष्टुप्।

अहं दां गृणते पूर्व्यं वस्वहं ब्रह्म कृणवं मह्यं वर्धनम्।
अहं भुवं यजमानस्य चोदितायज्वनः साक्षि विश्वस्मिन्भरे ॥१॥

स्तुतिकर्तालाई म इन्द्रले सनातन वैभव र आश्रय प्रदान गर्दछु। यज्ञीय अनुष्ठान मेरो उन्नतिका लागि हो। मेरा लागि हविष्यान्न समर्पित गर्ने यजमानको ऐश्वर्य म नै प्रेरित गर्दछु र यज्ञीय कर्मविहीनलाई पराजित गराउँछु।

मां धुरिन्द्रं नाम देवता दिवश्च ग्मश्चापां च जन्तवः।
अहं हरी वृषणा विव्रता रघू अहं वज्रं शवसे धृष्ण्वा ददे ॥२॥

द्युलोक, भूलोक र अन्तरिक्षमा उत्पन्न सबै प्राणी र देवता मलाई उपासना गर्नै पर्ने मान्दछन्। सङ्ग्राममा जानका लागि म हरि नामका, शक्तिशाली, विभिन्न काममा लागेका र चाँडो कुद्ने गति भएका अश्व रथमा आबद्ध गराउँछु। पराक्रमी शत्रुलाई परास्त गर्ने वज्र शक्तिको साधनका रूपमा धारण गर्दछु।

अहमत्कं कवये शिश्नथं हथैरहं कुत्समावमाभिरूतिभिः।
अहं शुष्णस्य श्नथिता वधर्यमं न यो रर आर्यं नाम दस्यवे ॥३॥

म इन्द्रले नै उशना ऋषिको संरक्षणका लागि अत्क नामका शत्रुलाई सताएँ। अनेकौं खालका व्यवस्था जुटाएर मैले कुत्सलाई संरक्षित गरें। मैले शत्रु शुष्णको संहार गर्नका लागि वज्र धारण गरें। दस्युलाई म आर्य भन्दिनँ।

अहं पितेव वेतसूँरभिष्टये तुग्रं कुत्साय स्मदिभं च रन्धयम्।
अहं भुवं यजमानस्य राजनि प्र यद्भरे तुजये न प्रियाधृषे ॥४॥

मैले पिताको जस्तै गरी वेतसु नामका जनपदलाई, तुग्र र स्मदिभलाई पनि कुत्स ऋषिका नियन्त्रणमा पारेको थिएँ। यजमानलाई म नै श्रीसम्पन्न बनाउँछु। पिताले जस्तै गरी म भक्तलाई शत्रुबाट सुरक्षित गरेर उनीहरूको हित गर्दछु।

अहं रन्धयं मृगयं श्रुतर्वणे यन्माजिहीत वयुना चनानुषक्।
अहं वेशं नम्रमायवेऽकरमहं सव्याय पड्गृभिमरन्धयम् ॥५॥

मतिर आएर मलाई नै स्तुति र प्रार्थना अर्पित गरेका हुनाले उहिले मैले श्रुतर्वा ऋषिका लागि मृगय नामका राक्षसलाई नियन्त्रणमा राखेको थिएँ। आयुका अधीनमा परेका वेश र सव्यका अधीनमा परेका पड्गृभीलाई मैले नै रक्षा गरेको थिएँ।

अहं स यो नववास्त्वं बृहद्रथं सं वृत्रेव दासं वृत्रहारुजम्।
यद्वर्धयन्तं प्रथयन्तमानुषग्दूरे पारे रजसो रोचनाकरम् ॥६॥

मैले वृत्रासुर संहार गरेझैं नववास्त्व र वृहद्रथको पनि संहार गरेको हुँ। त्यस बेला यी दुई चरम रूपमा प्रख्यात थिए। दुवैलाई मैले कान्तिमान् विश्वबाट निष्कासित गराएँ।

अहं सूर्यस्य परि याम्याशुभिः प्रैतशेभिर्वहमान ओजसा।
यन्मा सावो मनुष आह निर्णिज ऋधक्कृषे दासं कृत्व्यं हथैः ॥७॥

तीव्र गमनशील अश्वद्वारा म आफ्नै तेजले सूर्यका वरिपरि घुम्दछु। सोम अभिषव गर्ने यजमानले मलाई आह्वान गर्दा हिंसक शत्रुलाई तेज धारका अस्त्रले विनाश गर्दछु।

अहं सप्तहा नहुषो नहुष्टरः प्राश्रावयं शवसा तुर्वशं यदुम्।
अहं न्य१न्यं सहसा सहस्करं नव व्राधतो नवतिं च वक्षयम् ॥८॥

शत्रुका सात सहर विध्वंस गर्ने पनि म नै हुँ। महाबली भनेर मैले नै तुर्वश र यदुलाई सुप्रसिद्ध गराएँ। अति विशाल बन्धनकर्ता पनि म नै हुँ। अन्य स्तोतालाई पनि मैले नै शक्तिशाली बनाएँ र शत्रुका उनान्सय सहर विध्वंस गराएँ।

अहं सप्त स्रवतो धारयं वृषा द्रवित्न्वः पृथिव्यां सीरा अधि।
अहमर्णांसि वि तिरामि सुक्रतुर्युधा विदं मनवे गातुमिष्टये ॥९॥

जल वर्षा गराउने म इन्द्रले नै प्रवाहशील सात नदी धारण गरेको छु। पृथ्वीमा प्रवाहित र वेगवान् नदीलाई म नै सुशोभित गराउँछु। मानिसले खोजेको फल प्रदान गर्नका लागि म नै युद्धको मार्ग फराकिलो पारिदिन्छु।

अहं तदासु धारयं यदासु न देवश्चन त्वष्टाधारयद्रुशत्।
स्पार्हं गवामूधःसु वक्षणास्वा मधोर्मधु श्वात्र्यं सोममाशिरम् ॥१०॥

गाईका थुनमा प्रशंसनीय, उज्ज्वल र मधुर दुध धारण गराउने म नै हुँ। कुनै देवता वा त्वष्टादेवले पनि यो काम गर्न सक्दैनन्। नदीजस्तै भएर ती थुनले दुध वहन गर्दछन्। सोमसित मिसाएपछि दुध सबैका लागि उपयोगी हुन्छ।

एवा देवाँ इन्द्रो विव्ये नॄन् प्र च्यौत्नेन मघवा सत्यराधाः।
विश्वेत्ता ते हरिवः शचीवोऽभि तुरासः स्वयशो गृणन्ति ॥११॥

यसै किसिमले आफ्नो प्रभावको क्षमताले ऐश्वर्यवान् र सत्यको धनी म इन्द्र देवता र मानिसलाई सौभाग्ययुक्त गराउँछु। हे विभिन्न कर्म गर्ने र अश्वका अधिपति इन्द्रदेव! तिम्रा कार्य आफैँबाट नियन्त्रित छन्। अति प्रोत्साहित ऋत्विकले तिम्रा क्रियाकलापको प्रशंसा गर्दछन्।

[सूक्त - ५०]

**ऋषि** - इन्द्र वैकुण्ठ। **देवता** - इन्द्र वैकुण्ठ। **छन्द** - जगती अभिसारिणी त्रिष्टुप्।

प्र वो महे मन्दमानायान्धसोऽर्चा विश्वानराय विश्वाभुवे।
इन्द्रस्य यस्य सुमखं सहो महि श्रवो नृम्णं च रोदसी सपर्यतः ॥१॥

हे ऋत्विक हो! सम्पूर्ण विश्वका उत्पादक, मनुष्यका लागि अन्नदाता, महान् आनन्द प्रदायक, इन्द्रदेवको अर्चना गर। उनलाई द्यावापृथिवीले पनि उत्तम यज्ञ, सङ्घर्षशक्ति, महान् यश र धन आदि पदार्थ प्रदान गरेर पूजा गर्दछन्।

सो चिन्नु सख्या नर्य इनः स्तुतश्चर्कृत्य इन्द्रो मावते नरे।
विश्वासु धूर्षु वाजकृत्येषु सत्पते वृत्रे वाप्स्व१भि शूर मन्दसे ॥२॥

इन्द्रदेव मित्रजस्तै भएर मानिसका लागि हितचिन्तक, सबैका लागि स्तुतियोग्य र सबैका अधिपति हुन्। हामीजस्ता मानिसका उनी उपास्य हुन्। हे सज्जनका रक्षक वीर इन्द्रदेव! तिमी नै श्रेष्ठ कार्य, पराक्रम र बादलबाट जलको वर्षा गराउनका लागि स्तुति गर्न योग्य छौ।

के ते नर इन्द्र ये त इषे ये ते सुम्नं सधन्य१मियक्षान्।
कं ते वाजायासुर्याय हिन्विरे के अप्सु स्वासूर्वरासु पौंस्ये ॥३॥

हे इन्द्रदेव ! तिमीबाट अन्न, धन र सुखसम्पत्ति उपलब्ध गर्ने सत्पात्र को छ ? तिमीलाई असुरता संहार गराउने सामर्थ्य जुटाउन सोमपान गर्नका लागि प्रेरित को गर्छन् ? आफ्ना उब्जाउ भूमिमा जल वर्षा गराउन र पराक्रमी सामर्थ्य प्राप्त गर्नका लागि सोमरस समर्पण गर्ने सत्पात्र साधक को हुन् ?

भुवस्त्वमिन्द्र ब्रह्मणा महान्भुवो विश्वेषु सवनेषु यज्ञियः।
भुवो नॄँश्च्यौत्नो विश्वस्मिन्भरे ज्येष्ठश्च मन्त्रो विश्वचर्षणे ॥४॥

हे इन्द्रदेव ! हाम्रा यज्ञीय सत्कर्मले तिमी महिमावान् भएका छौ। सबै यज्ञीय कार्यमा तिमी नै यजनयोग्य छौ। तिमी सङ्ग्राममा प्रमुख शत्रुसंहारक बनेका छौ। हे सर्वद्रष्टा इन्द्रदेव ! तिमी सर्वोत्तम र सुयोग्य परामर्शदाता हौ।

अवा नु कं ज्यायान् यज्ञवनसो महीं त ओमात्रां कृष्टयो विदुः।
असो नु कमजरो वर्धाश्च विश्वेदेता सवना तूतुमा कृषे ॥५॥

हे इन्द्रदेव ! तिमी सर्वोत्तम भएर नै यज्ञसम्पादक यजमानको सुरक्षा शीघ्र गर। सबै मानिस तिम्रा महान् संरक्षण शक्तिबाट परिचित छन्। तिम्रो उत्कर्ष बढोस् र तिमी यो सोमयाग शीघ्र सम्पन्न गराऊ।

एता विश्वा सवना तूतुमा कृषे स्वयं सूनोसहसो यानि दधिषे।
वराय ते पात्रं धर्मणे तना यज्ञो मन्त्रो ब्रह्मोद्यतं वचः ॥६॥

हे शक्तिशाली इन्द्रदेव ! तिमी जुन सोमयज्ञ स्वीकार गर्दछौ, त्यो शीघ्रतापूर्वक सम्पन्न गराऊ। तिम्रो शत्रुसंहारक संरक्षण बलले हाम्रो सुरक्षा गरोस्। धर्मको जागृतिमा हाम्रा धनको सदुपयोग होस्। यो यज्ञ र मन्त्र तिम्रा लागि नै समर्पित होऊन् र श्रेष्ठ उत्तम यस्तो पवित्र वाणी तिम्रै निम्ति उच्चरित होस्।

ये ते विप्र ब्रह्मकृतः सुते सचा वसूनां च वसुनश्च दावने।
प्र ते सुम्नस्य मनसा पथा भुवन्मदे सुतस्य सोम्यस्यान्धसः ॥७॥

हे मेधासम्पन्न इन्द्रदेव ! जुन स्तोता एकत्र भएर सोम पेल्छन् र जो विभिन्न किमिसका ऐश्वर्य लाभको कामनाले दानसहित तिम्रो अर्चना गर्दछन्, ती पेलिएका सोमबाट आनन्दित हुन्छन्। त्यस बेला उनीहरू सुखसौभाग्य पाउनका लागि आन्तरिक रूपले तिम्रो मार्गदर्शनमा नै उत्तम पद प्राप्तिका अधिकारी होऊन्।

[सूक्त - ५१]

**ऋषि** - देवगण अग्नि सौचीक। **देवता** - देवगण अग्नि सौचीक। **छन्द** - त्रिष्टुप्।

महत्तदुल्वं स्थविरं तदासीद्येनाविष्टितः प्रविवेशिथापः।
विश्वा अपश्यद्बहुधा ते अग्ने जातवेदस्तन्वो देव एकः ॥१॥

हे अग्निदेव ! तिम्रो यो आच्छादन अति विशाल र स्थूल थियो, यसैले ढाकिएर तिमी जलतत्त्वमा रहेका थियौ। हे सर्वज्ञ अग्निदेव ! तिम्रा सबै अङ्ग विभिन्न तरिकाले सबै देवताहरूले देखे।

को मा ददर्श कतमः स देवो यो मे तन्वो बहुधा पर्यपश्यत्।
क्वाह मित्रावरुणा क्षियन्त्यग्नेर्विश्वाः समिधो देवयानीः ॥२॥

ती देवताहरू को थिए, जसले विभिन्न किसिमले मेरो रहस्यमय स्वरूप देखे ? हे मित्र र वरुणदेवता हो ! अग्निदेवका ती सबै प्रज्वलित देवयान साधनरूपको मार्ग कहाँ रहेको छ ? त्यो भनिदिने कृपा गर।

ऐच्छाम त्वा बहुधा जातवेदः प्रविष्टमग्ने अप्स्वोषधीषु।
तं त्वा यमो अचिकेच्चित्रभानो दशान्तरुष्यादतिरोचमानम् ॥३॥

हे सर्वज्ञ अग्निदेव ! जल र औषधितत्त्वमा अनेकौं प्रकारले तिमी सन्निहित छौ, हामी तिनैमा तिमीलाई खोज्दछौं। हे विलक्षण कान्तियुक्त अग्निदेव ! यस किसिमले विद्यमान रहेका तिम्रो परिचय यमदेवले प्राप्त गरे। दस वटा रहस्यमय गोप्य आश्रय-स्थलमा विद्यमान तिमी अति तेजस्वी छौ।

होत्रादहं वरुण बिभ्यदायं नेदेव मा युनजन्नत्र देवाः।
तस्य मे तन्वो बहुधा निविष्ट एतमर्थं न चिकेताहमग्निः ॥४॥

हे वरुणदेव ! म यजन कार्यले भयभीत भएर यहाँ आएको हुँ। मलाई यस किसिमका कार्यमा देवताले उपयोग नगरुन् भन्ने मेरो अभिलाषा छ। त्यसैले मैले आफ्नो स्वरूप विभिन्न किसिमले जलमा लुकाएको हुँ। म यस्ता कार्यमा इच्छुक छैनँ।

एहि मनुर्देवयुर्यज्ञकामोऽरङ्कृत्या तमसि क्षेष्यग्ने।
सुगान्पथः कृणुहि देवयानान्वह हव्यानि सुमनस्यमानः ॥५॥

हे अग्निदेव ! देवताका पूजक, मनस्वी साधक यज्ञ सम्पादन गर्ने रहर गर्दछन्। त्यसैले तिमी आऊ। तिमी स्वयं तेजोमय भएर पनि तमस्लाई आश्रय दिँदै छौ। तिमी यहाँ आएर देवताप्रति हविष्य पदार्थ लिएर जाने मार्ग हाम्रा लागि सरल बनाइदेऊ। तिमी हर्षित भएर हाम्रो हविष्य धारण गर।

अग्नेः पूर्वे भ्रातरो अर्थमेतं रथीवाध्वानमन्वावरीवुः।
तस्माद्भिया वरुण दूरमायं गौरो न क्षेप्नोरविजे ज्यायाः ॥६॥

हे देवता हो ! मार्गबाट गमन गर्ने रथी जसरी लक्ष्यसम्म पुग्दछ, उसै गरी मेरा तीन दाजुभाइ यस्तै कार्य गर्दागर्दै मृत्युका मुखमा परेका हुन्। हे वरुणदेव ! यसै डरले चिन्तित भएर म अग्नि पर भागेको हुँ। धनुर्धारीका प्रत्यञ्चादेखि जसरी हरिण डराउँछ, उसै गरी म पनि यस यजन कार्यदेखि डराएको छु।

कुर्मस्त आयुरजरं यदग्ने यथा युक्तो जातवेदो न रिष्याः।
अथा वहासि सुमनस्यमानोभागं देवेभ्यो हविषः सुजात ॥७॥

हे अग्निदेव ! तिमीलाई हामी अजम्मरी आयु प्रदान गर्दछौँ। हे सर्वज्ञ ! यसो भएपछि तिमी अमर रहनेछौ। हे सुजन्मा अग्निदेव ! अब तिमी निश्चिन्त भएर प्रसन्न मनले देवताकहाँ हव्य पुऱ्याऊ।

प्रयाजान्मे अनुयाजांश्च केवलानूर्जस्वन्तं हविषो दत्त भागम्।
घृतं चापां पुरुषं चौषधीनामग्नेश्च दीर्घमायुरस्तु देवाः ॥८॥

हे देवता हो ! यज्ञको प्रयाज भनिने पहिलो हविको भाग र अनुयाज भनिने पछिल्लो हविको भाग अनि हविको विशाल सिङ्गो भाग मलाई प्रदान गर। जलको सारतत्त्व घिउ, औषधिबाट उत्पन्न प्रमुख भाग र दीर्घायु मलाई प्रदान गर।

तव प्रयाजा अनुयाजाश्च केवल ऊर्जस्वन्तो हविषः सन्तु भागाः।
तवाग्ने यज्ञोऽयमस्तु सर्वस्तुभ्यं नमन्तां प्रदिशश्चतस्रः ॥९॥

हे अग्निदेव ! प्रयाज, अनुयाज र सिङ्गै हविष्यको असाधारण भाग तिमीलाई प्राप्त होऊन्। यो यज्ञ तिमीलाई नै समर्पित होस्। तिम्रासामु नतमस्तक भएर चारै दिशाले तिम्रो सम्मान गरुन्।

[सूक्त – ५२]

**ऋषि** – अग्नि सौचीक। **देवता** – देवगण। **छन्द** – त्रिष्टुप्।

विश्वे देवाः शास्तन मा यथेह होता वृतो मनवै यन्निषद्य।
प्र मे ब्रूत भागधेयं यथा वो येन पथा हव्यमा वो वहानि ॥१॥

हे देवता हो ! तिमीहरूले मलाई हविवाहकका रूपमा धारण गरेका छौ। मनुष्यका लागि देवताको प्रार्थना गर्न सकौँ भन्ने मार्गदर्शन गराओ। मेरो भाग कुन हो र तिमीहरूको भाग कुन हो भन्ने कुरो हामीलाई भनिदेओ। जुन बाटोबाट तिमीहरूका लागि यज्ञीय पदार्थ लिएर मैले जानुपर्ने हो, त्यो देखाइदेओ, त्यसो भएपछि म अग्नि तिमीहरूको भनाइअनुसार काम गर्न सकूँ।

अहं होता न्यसीदं यजीयान् विश्वे देवा मरुतो मा जुनन्ति।
अहरहरश्विनाध्वर्यवं वां ब्रह्मा समिद्भवति साहुतिर्वाम् ॥२॥

श्रेष्ठ यज्ञसम्पादक होताका रूपमा यज्ञीय कार्य गर्नका लागि म यहाँ रहेको छु। सम्पूर्ण देवता र मरुत्हरू हवि वहन गर्नका लागि मलाई प्रेरित गर्दछन्। हे अश्विनीकुमार हो ! तिमीहरूले ऋत्विक्को कार्य प्रतिदिन वहन गर्नुपर्दछ। कान्तिमान् सोम स्तोत्रजस्तै छ। उसै सोमबाट हाम्रो आहुति तिमीहरूलाई समर्पित होस्।

अयं यो होता किरु स यमस्य कमप्यूहे यत्समञ्जन्ति देवाः।
अहरहर्जायते मासिमास्यथा देवा दधिरे हव्यवाहम् ॥३॥

यी होताहरूको काम के हो ? होताले यजमानका यजन गर्ने हविरूपी द्रव्यको भाग देवतालाई प्राप्त हुन्छ। प्रतिदिन उज्ज्वल सूर्य र प्रतिमहिना उज्ज्वल चन्द्रमा प्रकट हुन्छन्। उनीहरूलाई हविवाहक अग्निदेवका रूपमा देवताले धारण गर्दछन्।

मां देवा दधिरे हव्यवाहमपम्लुक्तं बहु कृच्छ्रा चरन्तम्।
अग्निर्विद्वान्यज्ञं नः कल्पयाति पञ्चयामं त्रिवृतं सप्ततन्तुम् ॥४॥

म अग्नि सम्पूर्ण जगत्बाट लुप्त भएको थिएँ। अनेकौं किसिमका कठिन नियम पालन गर्ने देवताले खोजेर मलाई हविवाहकका रूपमा नियुक्त गरेका छन्। ज्ञानवान् अग्निदेव हाम्रो यज्ञ सम्पन्न गराउँछन्। यो यज्ञ पाँच मार्गबाट जान सकिने खालको छ। त्यसबाट तीन किसिमका सोम निकाल्ने गरिन्छ र सात छन्दले स्तुति गरिन्छ।

आ वो यक्ष्यमृतत्वं सुवीरं यथा वो देवा वरिवः कराणि।
आ बाह्वोर्वज्रमिन्द्रस्य धेयामथेमा विश्वाः पृतना जयाति ॥५॥

हे देवता हो ! म अग्नि तिमीहरूलाई हविका रूपले सेवा गर्दछु। त्यसो हुनाले तिमीहरूसित अमरता र वीर सन्तानका लागि प्रार्थना गर्दछु। म नै इन्द्रदेवका दुवै हातमा वज्र नामको अस्त्र जिम्मा लगाउँछु। यसैले उनले शत्रुका सबै सेनाहरूमाथि विजय प्राप्त गर्दछन्।

त्रीणि शता त्री सहस्रण्यग्निं त्रिंशच्च देवा नव चासपर्यन्।
औक्षन्घृतैरस्तृणन्बर्हिरस्मा आदिद्धोतारं न्यसादयन्त ॥६॥

तीन हजार, तीन सय उनन्चालीस देवशक्ति अग्निदेवकै सेवा साधना गर्दै घिउको आहुतिले अभिषेक गर्दछन्। उनका लागि कुशका आसन बिछाइएका छन् र होताका रूपमा उनलाई यज्ञमा प्रतिष्ठित गरिएको छ।

[सूक्त – ५३]

ऋषि – देवगण अग्नि सौचीक। देवता – अग्नि सौचीक। छन्द – त्रिष्टुप् जगती।

यमैच्छाम मनसा सोऽयमागाद्यज्ञस्य विद्वान्परुषश्चिकित्वान्।
स नो यक्षद्देवताता यजीयान्नि हि षत्सदन्तरः पूर्वो अस्मत् ॥१॥

मानसिक रूपले जुन अग्निदेवको हामी कामना गर्दछौं, उनै यज्ञका अङ्गउपाङ्ग जान्ने ज्ञानवान् अग्निदेव आउँदै छन्। त्यस्ता अति पूजनीय अग्निदेव देवत्व प्राप्तिका लागि गरिएका हाम्रा यज्ञको यजन गरुन् र यजन योग्य देवताका बीचमा हामीभन्दा पहिले नै वेदीका पूर्वतिर प्रतिष्ठित होऊन्।

अराधि होता निषदा यजीयानभि प्रयांसि सुधितानि हि ख्यत्।
यजामहै यज्ञियान्हन्त देवाँ ईळामहा ईड्याँ आज्येन ॥२॥

गतिलो तरिकाले यज्ञ सम्पादन गर्ने होताजस्ता अग्निदेव यज्ञस्थलमा प्रतिष्ठित भएर हव्यवाहक भएका छन्। उनी यजनीय देवतालाई चाँडै घिउको आहुतिले सन्तुष्ट गर्न सकियोस् भन्ने कामनाले चरु, पुरोडाश आदि सामग्री भाँति पुऱ्याएर निरीक्षण गर्छन्।

साध्वीमकर्देववीतिं नो अद्य यज्ञस्य जिह्वामविदाम गुह्याम्।
स आयुरागात्सुरभिर्वसानो भद्रामकर्देवहूतिं नो अद्य ॥३॥

हाम्रा यज्ञमा देवतालाई आह्वान गरेर ल्याउने जुन मुख्य कामको भाग हो, त्यसलाई अग्निदेवले नै सुसम्पन्न गरुन्। अग्निरूपी यज्ञको गूढ जिह्वा हामीले प्राप्त गरिसक्यौं। सुगन्धित र दीर्घायु धारण गरेर अग्निदेव हामीकहाँ उपस्थित भएका छन्। देवतालाई आह्वान गर्ने यज्ञ अग्निले सुसम्पन्न गरेका छन्।

तदद्य वाचः प्रथमं मसीय येनासुराँ अभि देवा असाम।
ऊर्जाद उत यज्ञियासः पञ्च जना मम होत्रं जुषध्वम् ॥४॥

हामी आज ती सर्वश्रेष्ठ वचन उच्चारण गर्दछौं। त्यस उच्चारणले हामी राक्षस पराजित गर्नमा सक्षम हुन्छौं। हे अन्नभक्षक, यजनीय अग्निदेव ! हे मानव समाजका पाँच थरी हो ! हाम्रो यज्ञ तिमीहरू सबैले स्वीकार गर।

पञ्च जना मम होत्रं जुषन्तां गोजाता उत ये यज्ञियासः।
पृथिवी नः पार्थिवात्पात्वंहसोऽन्तरिक्षं दिव्यात्पात्वस्मान् ॥५॥
पृथ्वीमा उत्पादन गरिएका अथवा हव्यादिका लागि उत्पन्न भएका यजन योग्य सबै कुराहरू पाँचै थरीले हाम्रा यज्ञका लागि ग्रहण गरून्। पार्थिव पापबाट हामीलाई पृथ्वीले जोगाऊन् र अन्तरिक्षले आकाशसम्बन्धी पापबाट सुरक्षित गरून्।

तन्तुं तन्वन्रजसो भानुमन्विहि ज्योतिष्मतः पथो रक्ष धिया कृतान्।
अनुल्बणं वयत जोगुवामपो मनुर्भव जनया दैव्यं जनम् ॥६॥
हे अग्निदेव ! यज्ञ विस्तृत गराउँदै लोक प्रकट गराउने सूर्यदेवको अनुसरण गर। सत्कर्मद्वारा ज्योतिर्मय देवमार्ग सुरक्षित गर र स्तोतालाई सुखदायी बनाऊ। हे अग्नि ! तिमी प्रशंसनीय बनेर मनुष्यलाई देवताको उपासनातर्फ प्रेरित गर।

अक्षानहो नह्यतनोत सोम्या इष्कृणुध्वं रशना ओत पिंशत।
अष्टावन्धुरं वहताभितो रथं येन देवासो अनयन्नभि प्रियम् ॥७॥
हे सोमका इच्छुक देवता हो ! रथमा योजित गर्न योग्य घोडा रथमा नार। तिनको लगाम ठिक गराऊ र घोडा पनि सजाऊ। आठ जना सारथी बस्न हुने सूर्यका रथबाट यज्ञमा आऊ। यसै रथमा देवताले हामीलाई लैजानेछन्।

अश्मन्वती रीयते सं रभध्वमुत्तिष्ठत प्र तरता सखायः।
अत्रा जहाम ये असन्नशेवाः शिवान्वयमुत्तरेमाभि वाजान् ॥८॥
अश्मन्वती नामको नदी बगिरहेको छ। सङ्गठित भएर उठौं र त्यो पार गरौं अनि घोडा सुसज्जित गरौं। हे मित्रहरू हो ! हाम्रा लागि जो कष्टदायी हुन्छन्, हामी तिनलाई त्याग गर्दछौं। नदी पार गरेर हामी सुखदायक अन्न उपलब्ध गर्दछौं।

त्वष्टा माया वेदपसामपस्तमो बिभ्रत्पात्रा देवपानानि शन्तमा।
शिशीते नूनं परशुं स्वायसं येन वृश्चादेतशो ब्रह्मणस्पतिः ॥९॥
त्वष्टादेव पात्र निर्माणकलामा विशेष सिपालु छन्। उनले देवताका लागि कलापूर्ण सुन्दर पिउने पात्र तयार गरेका हुन्। यस बेला उनी फलामे परशु उध्याउँदै छन्। त्यसैले उनी ब्रह्मणस्पति नामको पात्र निर्माण गर्नका लागि काठ काट्नेछन्।

सतो नूनं कवयः सं शिशीत वाशीभिर्याभिरमृताय तक्षथ।
विद्वांसः पदा गुह्यानि कर्तन येन देवासो अमृतत्वमानशुः ॥१०॥
हे क्रान्तदर्शी हो ! जुन बन्चराले अमृतपानका लागि पात्र बनाउँछौ, त्यो राम्रोसँग उध्याओ। हे ज्ञानी हो ! देवताले अमरता प्राप्त गरेको जस्तै निवासस्थान बनाओ।

गर्भे योषामदधुर्वत्समासन्यपीच्येन मनसोत जिह्वया।
स विश्वाहा सुमना योग्या अभि सिषासनिर्वनते कार इज्जितिम् ॥११॥
नारीका गर्भको बालकझैं मानसिक भाव गुप्त रहेका जिब्राले व्यक्त गर्ने श्रेष्ठ मनले प्रतिदिन देवताको समूहलाई स्तोत्र प्रदान गर्ने साधक विजयी हुन्छन्।

[सूक्त - ५४]

ऋषि - बृहदुक्थ वामदेव्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

तां सु ते कीर्तिं मघवन्महित्वा यत्त्वा भीते रोदसी अह्वयेताम्।
प्रावो देवाँ आतिरो दासमोजः प्रजायै त्वस्यै यदशिक्ष इन्द्र ॥१॥
हे ऐश्वर्यवान् इन्द्रदेव ! तिम्रो अलौकिक महिमायुक्त यशको गुणगान हामी राम्ररी गर्दछौं। राक्षसका भयले आतङ्कित भएका द्यावापृथिवीले तिम्रो आह्वान गर्दा तिमीले यहाँका निवासीलाई संरक्षित गरेका थियौ। तिमीले असुर विनाश गर्दा र यजमानमा श्रद्धा रहेका प्रजालाई आश्वस्त गरेका थियौ, हामी त्यसैको वर्णन गर्दछौं।

यदचरस्तन्वा वावृधानो बलानीन्द्र प्रब्रुवाणो जनेषु।
मायेत्सा ते यानि युद्धान्याहुर्नाद्य शत्रुं ननु पुरा विवित्से ॥२॥
हे इन्द्रदेव ! यशस्वी स्तोत्रले आफ्नो स्वरूप विस्तारित गरेर आफ्ना पराक्रमी प्रभुत्वको स्थापना गर्दै विचरण गर्ने तिम्रो कृति नै मायाको रूप हो। ऋषिहरूका मन्त्रिहरू तिम्रा शत्रुसंहारक विभिन्न

सङ्ग्रामको वर्णन गर्दछन्। त्यो सबै मायावी नै हो, किनभने न त अहिले नै तिम्रा कुनै वैरी छन्, न उहिले नै कुनै थियो।

**क उ नु ते महिमनः समस्यास्मत्पूर्व ऋषयोऽन्तमापुः।**
**यन्मातरं च पितरं च साकमजनयथास्तन्वः स्वायाः ॥३॥**

हे इन्द्रदेव ! तिम्रा सम्पूर्ण महिमाको सीमा हामीभन्दा पहिलेका कुन ऋषिले जानेका थिए ? किनभने आफ्नै एउटा शरीरबाट आफ्नै मातापितालाई तिमी उत्पन्न गर्दछौ।

**चत्वारि ते असुर्याणि नामादाभ्यानि महिषस्य सन्ति।**
**त्वमङ्ग तानि विश्वानि वित्से येभिः कर्माणि मघवञ्चकर्थ ॥४॥**

हे वैभवशाली इन्द्रदेव ! तिम्रा अति स्तुत्य चार शरीर नबुढिने र राक्षस संहार गर्ने खालका छन्। हे मित्ररूपी इन्द्रदेव ! तिमी ती स्वरूपसित परिचित छौ। तिनैबाट तिमी सबै महान् कार्य सम्पन्न गर्दछौ।

**त्वं विश्वा दधिषे केवलानि यान्याविर्या च गुहा वसूनि।**
**काममिन्मे मघवन्मा वि तारीस्त्वमाज्ञाता त्वमिन्द्रासि दाता ॥५॥**

हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमी सम्पूर्ण असाधारण र रहस्यमय दुई प्रकारका सम्पदा आफूभित्रै स्थापित गर्दछौ। त्यसैले तिमी हाम्रो शुभ आकाङ्क्षा विनाश नगरिदेऊ। हामीलाई तिमी अभीष्ट ऐश्वर्य प्रदान गर, किनभने तिमी स्वयं नै दाताका रूप हौ।

**यो अदधाज्ज्योतिषि ज्योतिरन्तर्यो असृजन्मधुना सं मधूनि।**
**अध प्रियं शूषमिन्द्राय मन्म ब्रह्मकृतो बृहदुक्थादवाचि ॥६॥**

जसले सूर्य आदि ज्योतिमा ज्योतिको रूप स्थापित गरे, जसले मधुर रसले युक्त सोम आदि रसको सिर्जना गरे, त्यस्ता खालका उनै इन्द्रदेवका निमित्त अम्ल किसिमका मन्त्र निर्माण गर्ने ऋषिले अत्यन्त मन पर्ने र बल बढाउने स्तोत्र गाए।

## [सूक्त - ५५]

**ऋषि** - बृहदुक्थ वामदेव्य। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

**दूरे तन्नाम गुह्यं पराचैर्यत्त्वा भीते अह्वयेतां वयोधै।**
**उदस्तभ्नाः पृथिवीं द्यामभीके भ्रातुः पुत्रान्मघवन्तित्विषाणः ॥१॥**

डराएकाहरूले तिमीलाई पुकार्दा तिमीले पृथ्वी र आकाश ओठमै थामिदियौ। हे ऐश्वर्य सम्पन्न इन्द्रदेव ! तिमी भरणपोषणकर्ताका पुत्रलाई विद्युत् आदिले प्रकाशित गर्दछौ। तिम्रो यो नाम तिमीदेखि विमुख हुनेहरूका लागि अव्यक्त भएर लुकेको हुन्छ।

**महत्तन्नाम गुह्यं पुरुस्पृग्येन भूतं जनयो येन भव्यम्।**
**प्रत्नं जातं ज्योतिर्यदस्य प्रियं प्रियाः समविशन्त पञ्च ॥२॥**

सबै ठाउँमा व्याप्त भएर रहेको अति गुप्त, प्रशंसनीय नामबाट तिमी भूत र भविष्य उत्पन्न गर्दछौ। त्यसबाट अति पुरानो र प्रिय लाग्ने ज्योतिको स्वरूप प्रकट भयो। उही प्रिय ज्योति प्राप्त गरेर पाँचै किसिमका मानिस खुसी हुन्छन्।

**आ रोदसी अपृणादोत मध्यं पञ्च देवाँ ऋतुशः सप्तसप्त।**
**चतुस्त्रिंशता पुरुधा वि चष्टे सरूपेण ज्योतिषा विव्रतेन ॥३॥**

इन्द्रदेव आफ्नो तेज द्युलोक, पृथ्वी र अन्तरिक्षमा व्याप्त गर्छन्। उनी बेलाबेलामा पाँच किसिमको प्राण र सात किसिमको तत्त्व प्रकाशित गर्दछन्। ती सबै विभिन्न कर्मका निर्वाहक चौँतीसौँ किसिमका देवताभैँ विभिन्न रूप र तेजमा देखा पर्ने गर्दछन्।

**यदुष औच्छः प्रथमा विभानामजनयो येन पुष्टस्य पुष्टम्।**
**यत्ते जामित्वमवरं परस्या महन्महत्या असुरत्वमेकम् ॥४॥**

हे उषादेवी ! तिमी प्रकाशका क्रममा सबैभन्दा पहिले उदाउँछ्यौ र तेजस्वीमध्येका अति तेजस्वीलाई पनि प्रकाशित गराउँछ्यौ। तिमी ऊर्ध्व लोक निवासी हौ तापनि तल्लो लोकमा रहने मानिससित तिम्रो मातृवत् सम्बन्ध छ। यस किसिमले महान् भएकी तिमीबाट महान् बल उत्पन्न भएको छ।

विधुं दद्राणं समने बहूनां युवानं सन्तं पलितो जगार।
देवस्य पश्य काव्यं महित्वाद्या ममार स ह्यः समान॥५॥

युद्धमा शौर्य प्रदर्शित गरेर शत्रुसेना लखेट्ने बल भएका इन्द्रदेवका प्रभावले कपाल फुलेका वृद्ध पनि फुर्तिला हुन्छन्। हे स्तोता! महान् इन्द्रदेवका पराक्रमको चर्चा गर्ने विचित्र काव्य खोज, ती आज सकिए तापनि पुनः प्रकट हुन सक्छन्।

शाक्मना शाको अरुणः सुपर्ण आ यो महः शूरः सनादनीळः।
यच्चिकेत सत्यमित्तन्न मोघं वसु स्पार्हमुत जेतोत दाता॥६॥

सर्वशक्तिले सम्पन्न, अरुण आभाले युक्त पक्षीजस्तै पराक्रमी र सनातन, गतिशील इन्द्रदेवले कर्तव्यका रूपमा निश्चित गरेको कार्य पूरा गर्दछन्, कुनै व्यर्थ हुँदैन। उनी आफ्ना पराक्रमले अभीष्ट वैभव आर्जन गरेर स्तोतालाई सबै ऐश्वर्य प्रदान गर्दछन्।

ऐभिर्ददे वृष्ण्या पौंस्यानि येभिरौक्षद्वृत्रहत्याय वज्री।
ये कर्मणः क्रियमाणस्य मह्न ऋतेकर्ममुदजायन्त देवाः॥७॥

वज्र धारण गर्ने, वृत्रहन्ता इन्द्रदेव मरुत्‌हरूसँग मिलेर महान् पुरुषार्थयुक्त कर्म गर्दछन्। वृत्रआदि शत्रु मार्न जल वर्षा गराउँछन्। मरुत्‌हरू इन्द्रदेवका सहायक सिद्ध हुन्छन्।

युजा कर्माणि जनयन्विश्वौजा अशस्तिहा विश्वमनास्तुराषाट्।
पीत्वी सोमस्य दिव आ वृधानः शूरो निर्युधाधमद्दस्यून्॥८॥

मरुत्‌हरूका सहयोगले वर्षारूपी काम इन्द्रदेवले नै गर्दछन्। उनी सबै किसिमका शौर्य निर्वाह गर्ने, असुर संहार गर्ने, सर्वव्यापी, शीघ्रतापूर्वक शत्रु पराजित गर्ने हुन्। वीर इन्द्रदेवले द्युलोकबाट आएर सोमपानले प्रोत्साहित भएर आयुधद्वारा असुर संहार गरे।

[सूक्त - ५६]

ऋषि - बृहदुक्थ वामदेव्य। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्, जगती।

इदं त एकं पर ऊ त एकं तृतीयेन ज्योतिषा सं विशस्व।
संवेशने तन्वश्चारुरेधि प्रियो देवानां परमे जनित्रे॥१॥

हे मृत्युको गाँस बनेका मृतक पुत्र! तिम्रो एक अंश अग्नि हुन्, दोस्रो अंश वायु हुन् र तेस्रो अंश ज्योतिरूप आत्मतत्त्व हो। ती तीनैबाट संयुक्त भएका हे पुरुष! तेजस्वी रूप प्राप्त गर। पवित्र स्थानमा रहेर देवशक्तिको प्रिय र श्रेष्ठ बन।

तनूष्टे वाजिन्तन्वं नयन्ती वाममस्मभ्यं धातु शर्म तुभ्यम्।
अह्रुतो महो धरुणाय देवान्दिवीव ज्योतिः स्वमा मिमीयाः॥२॥

हे वाजी! पृथ्वीले तिम्रो शरीर बोक्नेछ, तिमीलाई सुख प्रदान गर्नुका साथै हाम्रा लागि पनि ऐश्वर्यप्रद होस्। तिमी सत्यनिष्ठ भएर महान् देवताका धारणकर्ता परमेश्वर प्राप्त गर्न दिव्यलोकमा प्रतिष्ठित सूर्यदेवमा आफ्नो आत्मा एकाकार गराऊ।

वाज्यसि वाजिनेना सुवेनीः सुवितः स्तोमं सुवितो दिवं गाः।
सुवितो धर्म प्रथमानु सत्या सुवितो देवान्सुवितोऽनु पत्म॥३॥

हे पुत्र! तिमी सामर्थ्यवान्, शक्तिशाली र श्रेष्ठ कीर्तिमान् होऊ। श्रेष्ठ मार्गबाट गमन गर्दै उत्तम स्तवन पाएर श्रेष्ठ पद प्राप्त गर। सुखप्रद मार्गमा गमन गर्दै स्वर्गलोक जाऊ र श्रेष्ठ आचरणले धर्मको अनुष्ठान गरेर सर्वोत्तम सत्यको फल प्राप्त गर। शुभ कर्ममा लागेर देवत्व प्राप्त गर अनि सन्मार्गगामी बनेर सूर्यदेवसित आफूलाई संयुक्त गराऊ।

महिम्न एषां पितरश्चनेशिरे देवा देवेष्वदधुरपि क्रतुम्।
समविव्यचुरुत यान्यत्विषुरैषां तनूषु नि विविशुः पुनः॥४॥

हाम्रा पितृहरू देवताजस्तै पूजनीय छन्। देवताको पद पाएर उनले देवतासँगै आआफ्ना कर्म एकीकरण गरे। प्रकाशमयी दीप्ति प्राप्त गर्ने यहाँका मानिसहरू सबै उनैसँग संयुक्त भए। उनीहरू अब फेरि उसै शरीरमा प्रवेश गर्दछन्।

सहोभिर्विश्वं परि चक्रमू रजः पूर्वा धामान्यमिता मिमानाः।
तनूषु विश्वा भुवना नि येमिरे प्रासारयन्त पुरुध प्रजा अनु॥५॥

हाम्रा पितृहरूले आफ्नै सामर्थ्यशक्तिले सम्पूर्ण विश्वब्रह्माण्डको परिक्रमा गरिसके। यहाँका

बासिन्दामध्ये जुन पुरातन लोकमा जाने सामर्थ्य हुँदैन। उनीहरू त्यहाँ पनि गइसके। आफ्ना सूक्ष्म शरीरमा रहेर उनीहरूले सम्पूर्ण लोक नापिसके। प्रजाका लागि उनीहरूले विभिन्न किसिमले आफ्नो सामर्थ्य विकास गरेका छन्।

**द्विधा सूनवोऽसुरं स्वर्विदमास्थापयन्त तृतीयेन कर्मणा।**
**स्वां प्रजां पितरः पित्र्यं सह आवरेष्वदधुस्तन्तुमाततम्॥६॥**

सूर्यपुत्रजस्ता देवताले स्वर्गका ज्ञाता र सामर्थ्यवान् आदित्यलाई तेस्रो कर्मका दुई किसिमले प्रतिष्ठित गरेका छन्। हाम्रा पितृले सन्तान उत्पादन गरेर उनका शरीरमा वंशानुगत संस्कार स्थापित गराए। उनीहरूले आफ्नो वंशानुगत संस्कार थायी बनाए।

**नावा न क्षोदः प्रदिशः पृथिव्याः स्वस्तिभिरति दुर्गाणि विश्वा।**
**स्वां प्रजां बृहदुक्थो महित्वावरेष्वदधादा परेषु॥७॥**

मानिसले नौकाबाट जल पाएझैं, कल्याणमार्गले कष्टदायी आपद्‌बाट मुक्ति पाएझैं र पृथ्वीका विभिन्न दिशामा पुग्न सकेझैं बृहदुक्थ ऋषिले आफ्ना सन्तानका लागि महान् सामर्थ्यले अग्नि र सूर्यदेवसित संयुक्त गराए।

[सूक्त - ५७]

**ऋषि** - बन्धु सुबन्धु श्रुतबन्धु विप्रबन्धु गौपायन। **देवता** - विश्वेदेवा। **छन्द** - गायत्री।

**मा प्र गाम पथो वयं मा यज्ञादिन्द्र सोमिनः। मान्तः स्थुर्नो अरातयः॥१॥**

हे इन्द्रदेव ! हामी सन्मार्गबाट विचलित भएर कुमार्गगामी नबनौं। सोमयुक्त यज्ञीय सत्कर्मबाट कहिल्यै पनि विमुख नहोऔं। हाम्रो मार्ग दुष्ट शत्रुबाट निष्कण्टक होस्।

**यो यज्ञस्य प्रसाधनस्तन्तुर्देवेष्वाततः तमाहुतं नशीमहि॥२॥**

यज्ञ सम्पन्न गर्ने माध्यम र पुत्रजस्तो बनेर देवताकहाँ आफ्ना स्वरूपले व्याप्त रहने यजनीय अग्निदेवलाई हामी प्राप्त गरौं।

**मनो न्वा हुवामहे नाराशंसेन सोमेन। पितॄणां च मन्मभि॥३॥**

हामी श्रेष्ठ पुरुषमा प्रशंसित सोम र पितृ सन्तुष्ट गराउने स्तोत्रले देवता आह्वान गर्छौं।

**आ त एतु मनः पुन क्रत्वे दक्षाय जीवसे। ज्योक् च सूर्यं दृशे॥४॥**

सत्कर्म र कार्यदक्षताका लागि चिरकालसम्म सूर्यदेवको दर्शन गर्ने मन श्रेष्ठ होस्।

**पुनर्नः पितरो मनो ददातु दैव्यो जनः। जीवं व्रातं सचेमहि॥५॥**

हाम्रा मनलाई श्रेष्ठताका लागि पितृहरूले पुनः प्रेरित गरुन् अनि त्यसैबाट हामी आफ्नो जीवन र प्राण बलियो बनाउन सकौं।

**वयं सोम व्रते तव मनस्तनूषु बिभ्रतः। प्रजावन्तः सचेमहि॥६॥**

हे सोमदेव ! हामी याजक तिम्रै अनुरूप कर्मका नियममा आबद्ध रहँदै शरीर र मन लगाउछौं। त्यसले गर्दा हामी सन्तानयुक्त भईकन पोषणमा सक्षम पनि होऔं।

[सूक्त - ५८]

**ऋषि** - सुबन्धु श्रुतबन्धु गौपायन। **देवता** - मन आवर्तन। **छन्द** - अनुष्टुप्।

**यत्ते यमं वैवस्वतं मनो जगाम दूरकम्।**
**तत्त आ वर्तयामसीह क्षयाय जीवसे॥१॥**

हे बन्धु ! तिम्रो मन विवस्वान्‌का पुत्र यमदेवका नजिकमा पुगेको छ, हामी त्यहाँबाट फिर्ता ल्याउँछौं। तिमीले संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

**यत्ते दिवं यत्पृथिवीं मनो जगाम दूरकम्।**
**तत्त आ वर्तयामसीह क्षयाय जीवसे॥२॥**

तिम्रो मन सुदूर दिव्यलोक र भूलोकका नजिक जान्छ, त्यसलाई यहीं फिर्ता ल्याउँछौं। किनभने तिमीले यस संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

**यत्ते भूमिं चतुर्भृष्टिं मनो जगाम दूरकम्।**
**तत्त आ वर्तयामसीह क्षयाय जीवसे॥३॥**

जतासुकैबाट चञ्चल तिम्रो मन अति टाढाको भूभागमा जान्छ, हामी फिर्ता ल्याउँछौं। किनभने तिमीले यस संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

यत्ते चतस्रः प्रदिशो मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥४॥

तिम्रो मन टाढाका ठाउँमा अति टाढासम्म जान्छ, हामी त्यसलाई यहाँ फिर्ता ल्याउँछौं। किनभने तिमीले यस संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

यत्ते समुद्रमर्णवं मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥५॥

तिम्रो मन जलले परिपूर्ण समुद्र वा अन्तरिक्षभित्र निकै टाढासम्म गइसकेको छ, हामी फिर्ता ल्याउँछौं। किनभने तिमीले संसारमा निवास गर्न जीवन धारण गरेका हौ।

यत्ते मरीचीः प्रवतो मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥६॥

तिम्रो मन चारैतिर फैलिएका किरणका नजिक पुगेको छ, हामी फिर्ता लिएर आउँछौं। किनभने तिमीले यस संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

यत्ते अपो यदोषधीर्मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥७॥

तिम्रो मन टाढा रहेका बोटबिरुवा जान्छ, त्यसलाई त्यहाँबाट फिर्ता लिएर आउँछौं। किनभने तिमीले यस संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

यत्ते सूर्यं यदुषसं मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥८॥

तिम्रो मन अत्यन्त टाढा रहेका सूर्यदेव वा उषादेवीका नजिकै पुग्न गएको छ, त्यहाँबाट हामी फिर्ता लिएर आउँछौं। तिमीले संसारमा निवास गर्न जीवन धारण गरेका हौ।

यत्ते पर्वतान्बृहतो मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥९॥

तिम्रो मन टाढाका देशमा रहेका पहाडी शृङ्खलाहरूमा रमाउँदै छ, हामी फिर्ता गरेर यहाँ ल्याउँछौं। तिमीले यस संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

यत्ते विश्वमिदं जगन्मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥१०॥

तिम्रो मन यस सिङ्गो विश्वमा अलग्गै टाढा पुगिसकेको छ, हामी फिर्ता ल्याउँछौं। किनभने तिमीले यस संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

यत्ते पराः परावतो मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥११॥

तिम्रो मन दूरभन्दा दूरदेशका कुनै ठाउँमा पुगेको छ, त्यसलाई हामी त्यहाँबाट ल्याउँछौं। किनभने तिमीले यस संसारमा निवास गर्नका लागि नै जीवन धारण गरेका हौ।

यत्ते भूतं च भव्यं च मनो जगाम दूरकम्।
तत्त आ वर्तयामसीह क्षयाय जीवसे ॥१२॥

तिम्रो मन भूत वा भविष्यतमध्ये कुनै टाढा कालमा पुगेको छ, त्यसलाई हामी त्यहाँबाट यहाँ लिएर आउँछौं। किनभने तिमीले संसारमा निवास गर्न जीवन धारण गरेका हौ।

[सूक्त - ७९]

**ऋषि** - बन्धु विप्रबन्धु गौपायन। **देवता** - निर्ऋति असुनीति। **छन्द** - त्रिष्टुप् पङ्क्ति।

प्र तार्यायुः प्रतरं नवीयः स्थातारेव क्रतुमता रथस्य।
अध च्यवान उत्तवीत्यर्थं परातरं सु निर्ऋतिर्जिहीताम् ॥१॥

निपुण सारथी भएर रथमा चढ्ने मानिसले सुखको अनुभूति गरेझैं सुबन्धुको आयु यौवनयुक्त र दीर्घ हुँदै बढ्दछ। प्रगतिशील पनि जीवनको उद्देश्य उत्तम रीतिले प्राप्त गरोस्। पापका अधिष्ठाता देवता धर्मादेखि पर होऊन्।

**सामन्नु राये निधिमन्वन्नं करामहे सु पुरुध श्रवांसि।**
**ता नो विश्वानी जरिता ममत्तु परातरं सु निर्ऋतिर्जिहीताम् ॥२॥**

सामगान प्रारम्भ हुँदा सम्पदा प्राप्त गर्न हामी श्रेष्ठ अन्न र विभिन्न श्रेष्ठतम हविरूपी द्रव्य सङ्ग्रह गर्दछौं। हामी निर्ऋतिलाई वन्दना गर्दछौं। उनले हाम्रा सबै पदार्थ चाखून्, जीर्ण बनाऊन् र हामीबाट राम्रैसित टाढा गइदिऊन्।

**अभी ष्वऽर्यः पौंस्यैर्भवेम द्यौर्न भूमिं गिरयो नाज्रान्।**
**ता नो विश्वानि जरिता चिकेत परातरं सु निर्ऋतिर्जिहीताम् ॥३॥**

हामी आफ्ना पराक्रम शक्तिले शत्रुलाई राम्ररी पराजित गरौं। पृथ्वीमाथि आकाश स्थित भएझैं हामी शत्रुमाथि प्रभाव स्थापित गरौं। मेघको वेग पर्वतले छेकिएझैं हामी पनि शत्रुको गति रोक्न सकौं। हाम्रा सबै स्तोत्र सुनेर निर्ऋतिहरू हामीदेखि पर जाऊन्।

**मो षु णः सोम मृत्यवे परा दाः पश्येम नु सूर्यमुच्चरन्तम्।**
**द्युभिर्हितो जरिमा सु नो अस्तु परातरं सु निर्ऋतिर्जिहीताम् ॥४॥**

हे सोमदेव ! मृत्युले हामीलाई अधीनस्थ नबनाओस्। सूर्यदेवलाई आकाशमार्गबाट जाँदै गरेको हामी सधैं देख्न पाऔं। हाम्रो बुढेस काल पनि सधैं सुखद होस् र निर्ऋति हामीदेखि पर जाऊन्।

**असुनीते मनो अस्मासु धारय जीवातवे सु प्र तिरा न आयुः।**
**रारन्धि नः सूर्यस्य सन्दृशि घृतेन त्वं तन्वं वर्धयस्व ॥५॥**

हे प्राणविद्याका विशेषज्ञ ! हामीतिर ध्यान देऊ र हाम्रो दीर्घ जीवनका लागि उचित किसिमले आयु बढाइदेऊ। सूर्यदेवको प्रकाश भएका ठाउँसम्म हामीलाई सुरक्षित गराऊ। हाम्रो शरीर घिउ आदिले परिपुष्ट गराऊ।

**असुनीते पुनरस्मासु चक्षुः पुनः प्राणमिह नो धेहि भोगम्।**
**ज्योक् पश्येम सूर्यमुच्चरन्तमनुमते मृडया नः स्वस्ति ॥६॥**

हे प्राणविद्याको ज्ञान भएका ! हाम्रा लागि तिमी पुनः नेत्रशक्ति, प्राणऊर्जा र उपभोग्य सामग्री प्रदान गर। हामी चिरकालसम्म सूर्यको दर्शनबाट लाभान्वित हौं। हे अनुमति ! हामी जेबाट नष्ट हुँदैनौं त्यसैले हाम्रो कल्याण गर।

**पुनर्नो असुं पृथिवी ददातु पुनर्द्यौर्देवी पुनरन्तरिक्षम्।**
**पुनर्नः सोमस्तन्वं ददातु पुनः पूषा पथ्यां३ या स्वस्तिः ॥७॥**

पृथ्वी, अन्तरिक्ष, द्युलोकले हामीलाई पुनः प्राणशक्ति प्रदान गरुन्। सोमदेवले हामीलाई पुनः शारीरिक सामर्थ्य प्रदान गरुन् र सर्वपोषक पूषादेवले हामीलाई कल्याणकारी वाणी प्रदान गरुन्। त्यसबाट हाम्रो हरेक किसिमले मङ्गल होस्।

**शं रोदसी सुबन्धवे यह्वी ऋतस्य मातरा।**
**भरतामप यद्रपो द्यौः पृथिवी क्षमा रपो मो षु ते किं चनाममत् ॥८॥**

महिमायुक्त र यज्ञका मातृस्वरूपा द्यावापृथिवीले सुबन्धुको कल्याण गरुन्। हाम्रा पापकर्म टाढा गरिदिऊन्। हे द्यावापृथिवी ! तिमीहरू दुवै क्षमाशील भएपछि पापकर्म कसरी होला ? हे सुबन्धु ! ती पापकर्मले तिमीलाइ पीडित नगराईकन नष्ट होऊन्।

**अव द्वके अव त्रिका दिवश्चरन्ति भेषजा। क्षमा चरिष्ण्वेककं**
**भरतामप यद्रपो द्यौः पृथिवी क्षमा रपो मो षु किं चनाममत् ॥९॥**

स्वर्गलोकदेखि पृथिवीसम्म दुई र तीन रोगनिवारक औषधिको सञ्चरण गराउँछन्, तिनीहरूमध्येका एक औषधि पृथिवीलोकमा विचरण गर्दछ। हे द्यावापृथिवी ! हाम्रो पापकर्म पर हटाऊ। हे सुबन्धु ! कुनै पापकर्मले तिमीलाई दुःख नदिऊन्।

**समिन्द्रेरय गामनड्वाहं य आवहदुशीनराण्या अनः।**
**भरतामप यद्रपो द्यौः पृथिवि क्षमा रपो मो षु ते किं चनाममत् ॥१०॥**

हे इन्द्रदेव ! साँढेले उशीनराणी नामको औषधि वहन गरेर ल्यान्छ, त्यस्ता गाडा तान्ने गोरु राम्रोसित धपाऊ। हे द्युलोक र पृथिवी ! हाम्रो पाप हटाइदेओ। हे सुबन्धु ! तिम्रा कुनै पापले हामीलाई दुःख नदिऊन्।

[सूक्त - ६०]

ऋषि - श्रुतबन्धु विप्रबन्धु। देवता - इन्द्र जीव हस्त। छन्द - अनुष्टुप् गायत्री पंक्ति।

आ जनं त्वेषसन्दृशं माहीनानामुपस्तुतम्। अगन्म बिभ्रतो नमः ॥१॥

महान् व्यक्तिले प्रशंसा गरेका प्रदेशमा हामी विनम्र भावले प्रवेश गरेका छौं।

असामातिं नितोशनं त्वेषं निययिनं रथम्। भजेरथस्य सत्पतिम् ॥२॥

शत्रुसंहारक, तेजस्वी रथजस्तै सर्वत्र गमनशील भजेरथ राजाका वंशज र सज्जनका संरक्षक असमाति नरेशको हामी प्रार्थना गर्दछौं।

यो जनान्महिषाँ इवातितस्थौ पवीरवान्। उतापवीरवान्युधा ॥३॥

सिंहले अर्ना पछारेर मारेझैं उनले हातमा खड्ग लिएर शत्रु मारिदिन्छन्। खड्ग नलिए पनि उनी शत्रुमाथि विजय प्राप्त गर्दछन्।

यस्येक्ष्वाकुरुप व्रते रेवान्मराय्येधते। दिवीव पञ्च कृष्टयः ॥४॥

शत्रुसंहारक र ऐश्वर्यसम्पन्न राजा इक्ष्वाकु शासनमा प्रतिष्ठा प्राप्त गर्छन्। पाँचै वर्णका मानिसले स्वर्गीय सुख भोगून्।

इन्द्र क्षत्रासमातिषु रथप्रोष्ठेषु धारय। दिवीव सूर्यं दृशे ॥५॥

हे इन्द्रदेव ! सूर्यदेव आकाशमा देखिएझैं तिमी रथमा आरुढ भएर असमाति राजालाई सुरक्षा बल धारण गराऊ।

अगस्त्यस्य नद्भ्यः सप्ती युनक्षि रोहिता।
पणीन्न्यक्रमीरभि विश्वान्राजन्नराधसः ॥६॥

हे राजन् ! तिमी अगस्त्य ऋषिका सुखदायी बन्धुबान्धवका लागि आफ्ना गतिशील दुई वटा राता वर्णका अश्व रथमा नियुक्त गर। अति कन्जुस व्यापारी, दान आदि असल कार्यमा शून्य छन् भने तिनलाई तिमी पराजित गराऊ।

अयं मातायं पितायं जीवातुरागमत्। इदं तव प्रसर्पणं सुबन्धवेहि निरिहि ॥७॥

यहाँ आएका अग्निदेव माता, पिता र जीवनदाता हुन्। हे प्राण ! यो शरीर जीवनको आश्रय हो। यसैमा अडिएर बस।

यथा युगं वरत्रया नह्यन्ति धरुणाय कम्।
एवा दाधार ते मनो जीवातवे न मृत्यवेऽथो अरिष्टतातये ॥८॥

रथ थाम्नका लागि दुवै जुवामा डोरी बाँधेझैं तिम्रो मनलाई जीवनशक्ति र आरोग्यताका लागि धारण गर्दछौं, मृत्युका लागि होइन।

यथेयं पृथिवी मही दाधारेमान्वनस्पतीन्।
एवा दाधार ते मनो जीवातवे न मृत्यवेऽथो अरिष्टतातये ॥९॥

विशाल धर्तीले यी वृक्षवनस्पतिलाई धारण गरेझैं अग्निदेव तिम्रा मनलाई धारण गर्दछन्। त्यसैबाट तिमी जीवनशक्ति र कल्याण प्राप्त गर र मृत्युबाट संरक्षित होऊ।

यमादहं वैवस्वतात्सुबन्धोर्मन आभरम्।
जीवातवे न मृत्यवेऽथो अरिष्टतातये ॥१०॥

विवस्वान्का पुत्र यमराजबाट हामीले सुबन्धुको मन विमुक्त गरायौं। त्यसबाट उनी कल्याणरूपी जीवन धारण गर्दै मृत्युबाट सुरक्षित रहून्।

न्यग्वातोऽव वाति न्यक्तपति सूर्यः। नीचीनमघ्न्या दुहे न्यग्भवतु ते रपः ॥११

वायुदेव दिव्यलोकबाट तल्लो लोकमा प्रवाहित हुन्छन्। सूर्यदेव माथिबाट तलतिर ताप प्रदान गर्दछन्। अहिंसक गाई तलै दुहिन्छन्। त्यसै गरी हे सुबन्धु ! तिम्रो मङ्गल पनि तलका लोकतिर जाने होस्।

अयं मे हस्तो भगवानयं मे भगवत्तरः।
अयं मे विश्वभेषजोऽयं शिवाभिमर्शनः ॥१२॥

हाम्रो हात सौभाग्यले युक्त छ। अति सौभाग्यशाली हात सबैका लागि सबै रोग निवारण गर्ने खालको छ। यो हात शुभ र कल्याणकारी छ।

[सूक्त - ६१]

ऋषि - नाभानेदिष्ठ मानव। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

**इदमित्था रौद्रं गूर्तवचा ब्रह्म क्रत्वा शच्यामन्तराजौ।**
**क्राणा यदस्य पितरा मंहनेष्ठाः पर्षत्पक्थे अहन्ना सप्त होतॄन् ॥१॥**

नाभानेदिष्ठ ऋषिका मातापिता र दाजुभाइले कार्यविभाजन गर्ने बेलामा नाभानेदिष्ठलाई उनको भाग दिन बिर्सिएर रुद्रदेवको अर्चना गर्न थाले। यसो भएपछि नाभानेदिष्ठ पनि रुद्रको स्तोत्रका लागि तयार भएर अङ्गिराहरू यज्ञमा सम्मिलित भए। यज्ञका छैटौं दिन उनलाई बिर्सिने मानिस र सात होताहरूलाई उनैले यज्ञको कार्य पूरा गराए।

**स इद्दानाय दभ्याय वन्वञ्च्यवानः सूदैरमिमीत वेदिम्।**
**तूर्वयाणो गूर्तवचस्तमः क्षोदो न रेत इतऊति सिञ्चत् ॥२॥**

स्तोतालाई ऐश्वर्य प्रदान गर्ने र शत्रु संहार गर्नका लागि अस्त्रादि दिँदै रुद्रदेव यज्ञमा विराजमान भए। जलवर्षाद्वारा बादलले आफ्नो प्रभाव या बल प्रदर्शन गरेझैं रुद्रदेव यज्ञमा उपस्थित भएर आफ्नो क्षमता सर्वत्र देखाउन थाले।

**मनो न येषु हवनेषु तिग्मं विपः शच्या वनुथो द्रवन्ता।**
**आ यः शर्याभिस्तुविनृम्णो अस्याश्रीणीतादिशं गभस्तौ ॥३॥**

हे अश्विनीकुमार हो ! जुन ऋत्विक् प्रचुर हविष्य पदार्थले सम्पन्न भएर पनि आफ्ना हातमा औंला पक्रेर तिम्रो नाम उच्चारण गर्दै यज्ञ सम्पादन गर्दछन्, तिमी मनजस्तै शीघ्र गतिले त्यस स्तोताका यज्ञमा विवेकपूर्वक गमन गर्दछौ।

**कृष्णा यद्गोष्वरुणीषु सीदद्दिवो नपाताश्विना हुवे वाम्।**
**वीतं मे यज्ञमा गतं मे अन्नं ववन्वांसा नेषमस्मृतध्रू ॥४॥**

दिव्यलोकका पुत्र अश्विनीकुमार हो ! रातको अन्धकार विनाश भएर प्रातःकालीन सूर्यका किरणको रातो रङ्गको आभा प्रकट हुँदा तिमीलाई हामी आह्वान गर्दछौं। तिमी यज्ञको इच्छाले प्रेरित भएर हाम्रा यज्ञमा आऊ र हविष्यान्न सेवन गर। तिमीहरू दुवै अश्वझैं निरन्तर हवि भक्षण गर्दै द्वेषको भावना बिर्स।

**प्रथिष्ट यस्य वीरकर्ममिष्णदनुष्ठितं नु नर्यो अपौहत्।**
**पुनस्तदा वृहति यत्कनाया दुहितुरा अनुभृतमनर्वा ॥५॥**

प्रजापति ब्रह्माको तेज सन्तान उत्पादन गर्नमा सक्षम छ, उनैले मानिसका हितमा तेज छोड्दछन्। आवश्यकताअनुसार उनी तेज पुनः धारण गर्दछन्। उनले आफ्नी सुन्दर कन्या उषामा त्यहीं उत्पादक तेज स्थापित गराए।

**मध्या यत्कर्त्वमभवभीके कामं कृण्वाने पितरी युवत्याम्।**
**मनानग्रेतो जहतुर्वियन्ता सानौ निषिक्तं सुकृतस्य योनौ ॥६॥**

सृष्टिको कामनाले युक्त भएर प्रजापतिले युवती कन्या उषामा तेज स्थापित गराएका बेला दुवैका बीचमा शक्तिको प्रतीक सानो प्राणरूपी ऊर्जा अभिसिञ्चित भयो। यज्ञको आधारस्वरूप उच्च उद्देश्य प्राप्तिका लागि दुवैको सङ्गम भएपछि कल्याणका प्रतीक रुद्रको उत्पत्ति भयो।

**पिता यत्स्वां दुहितरमधिष्कन्क्ष्मया रेतः सञ्जग्मानो नि षिञ्चत्।**
**स्वाध्योऽजनयन्ब्रह्म देवा वास्तोष्पतिं व्रतपां निरतक्षन् ॥७॥**

कन्या उषासँग प्रजापतिको तेज संयोजन भएका बेला पृथ्वीका लागि उत्पादक तेज सेचन गरियो। त्यसैबाट सत्कर्मशील देवताले ब्रह्मशक्ति उत्पादन गरे। वास्तोष्पतिका त्यस व्रतशीलताले वास्तोष्पतिको सिर्जना भयो।

**स ईं वृषा न फेनमस्यदाजौ स्मदा परैदप दभ्रचेताः।**
**सरत्पदा न दक्षिणा परावृङ् न ता नु मे पृशन्यो जगृभ्रे ॥८॥**

सामर्थ्यवान् इन्द्रदेवले नमुची वध गर्ने बेलामा मुखबाट फिँज काढ्दै युद्धबाट फिर्ता भएझैं हाम्रा नजिकै वास्तोष्पति जुन गोडाले आए उनैद्वारा फिर्ता गए। अङ्गिराहरूले दक्षिणाका रूपमा हामीलाई गाई प्रदान गरे। उनले ती गाई परैबाट त्यागेर एक पाइलो अघि सरेनन्। सजिलोसित ग्रहण गरिने हाम्रा गाई मार्गदर्शक रुद्रदेवले ग्रहण गर्दैनन्।

मक्षू न वह्निः प्रजाया उपब्दिरग्निं न नग्न उप सीददूधः।
सनितेध्मं सनितोत वाजं स धर्ता जज्ञे सहसा यवीयुत् ॥९॥

प्रजालाई सताउने र अग्निवत्तै दहन शक्ति भएका असुर अचानक शीघ्रताका साथ यस यज्ञमा उपस्थित हुन सक्दैनन्। यज्ञमा पनि वस्त्रहीन दुष्ट असुर अग्निका नजिक आउन सक्दैनन्। किनभने यस यज्ञका साधक रुद्रदेव हुन्, यज्ञका अर्थात् संरक्षक अग्निदेव समिधा ग्रहण गर्दै र हविष्यान्नरूपी शक्ति बोकेर यज्ञनायकका रूपमा अग्निदेव राक्षससितका युद्धमा जुटेका हुन्छन्।

मक्षू कनायाः सख्यं नवग्वा ऋतं वदन्त ऋतयुक्तिमग्मन्।
द्विबर्हसो य उप गोपमागुरदक्षिणासो अच्युता दुदुक्षन् ॥१०॥

नौ महिनासम्म यज्ञको अनुष्ठान गर्दै अङ्गिरसहरूले गाई उपलब्ध गरे। उनले सुन्दर स्तुतिका सहयोगले यज्ञीय वाणी प्रयोग गर्दै पूर्ण गरे। उनीहरूले इहलौकिक र पारलौकिक दुवै किसिमका उपलब्धि प्राप्त गरे र इन्द्रका समीप गए। दक्षिणारहित निष्काम भावले सत्र नामको यज्ञ उनीहरूले सम्पन्न गरेर अनन्त फल प्राप्त गरे।

मक्षू कनायाः सख्यं नवीयो राधो न रेत ऋतमित्तुरण्यन्।
शुचि यत्ते रेक्ण आयजन्त सबर्दुघायाः पय उस्रियायाः ॥११॥

अङ्गिराहरूले अमृततुल्य दुधालु गाईको सफा र पवित्र दुध यज्ञमा समर्पित गर्दा उत्तम स्तोत्र वाणीले नवीन सम्पत्तिजस्तै द्युलोकले सेचन गरेको वर्षारूपी प्रवाह प्राप्त गरे।

पश्वा यत्पश्चा वियुता बुधन्तेति ब्रवीति वक्तरी रराणः।
वसोर्वसुत्वा कारवोऽनेहा विश्वं विवेष्टि द्रविणमुप क्षु ॥१२॥

यजमान स्तोता गोठमा गाईविनाका देखेर स्तोत्रमा रमाउने र ऐश्वर्यले विशेष वैभवशाली, पापरहित इन्द्रदेव सबै गाईरूपी धन चारै तिरबाट बटुलेर यजमान साधकलाई दिनका लागि तयार भएका छन् भन्दछन्।

तदिन्न्वस्य परिषद्वानो अग्मन्पुरू सदन्तो नार्षदं बिभित्सन्।
वि शुष्णस्य संग्रथितमनर्वा विदत्पुरुप्रजातस्य गुहा यत् ॥१३॥

अनेकौं रूपमा विस्तारयुक्त बलशाली इन्द्रदेवले शुष्ण नामका राक्षसको गोप्य मर्म पत्ता लगाएर त्यसलाई विनाश गर्दा अथवा नृषदका पुत्रको संहार गर्दा उनका सेवकहरू विभिन्न किसिमले उनलाई घेरेर उनीसितै जान्छन्।

भर्गो ह नामोत यस्य देवाः स्वर्ण ये त्रिषधस्थे निषेदुः।
अग्निर्ह नामोत जातवेदाः श्रुधी नो होतर्ऋतस्य होताध्रुक् ॥१४॥

स्वर्गीय स्थितिअनुसार यज्ञस्थानका कुशका आसनमा प्रतिष्ठित देवताहरू अग्निलाई भर्ग भन्ने नामले सम्बोधित गर्दछन्। अग्निको एउटा देवको नाम जातवेदस् पनि हो। हे यज्ञ उत्पादक यज्ञका होतारूप अग्निदेव ! अनुकूल भएर हाम्रो आह्वान स्नेहयुक्त भावनाले ग्रहण गर।

उत त्या मे रौद्रावर्चिमन्ता नासत्याविन्द्र गूर्तये यजध्यै।
मनुष्वद्वृक्तबर्हिषे रराणा मन्दू हितप्रयसा विक्षु यज्यू ॥१५॥

हे इन्द्रदेव ! तेजयुक्त दुवै रुद्रपुत्र अश्विनीकुमार स्तोत्र सुनेर यज्ञस्थलमा आऊन्। ती आदिपुरुष महाराज मनुका यज्ञमा प्रशंसित भएझैं यज्ञस्थलमा अति हर्षित होऊन्। हामीमाथि कृपा गर्दै श्रेष्ठ धन र अन्नदाता प्रजाको सुखका लागि यज्ञ धारण गरून्।

अयं स्तुतो राजा वन्दि वेधा अपश्च विप्रस्तरति स्वसेतुः।
स कक्षीवन्तं रेजयत्सो अग्निं नेमिं न चक्रमर्वतो रघुद्रु ॥१६॥

सर्वका प्रेरक र सर्वबाट स्तुति गरिएका औषधिका राजा सोमदेवको प्रार्थना गर्दछौं। शुद्ध र कार्यमा कुशल सोम स्वयं सेतुरूप हुन्। उनी सधैं जल पार गर्दछन्। शीघ्र गमनशील घोडाले चक्रको धुरा कम्पित गरेझैं कक्षीवान् र अग्निलाई पनि तिनै सोमदेव प्रकम्पित गराउँछन्।

स द्विबन्धुर्वैतरणो यष्टा सबर्धुं धेनुमस्वं दुहध्यै।
सं यन्मित्रावरुणा वृञ्ज उक्थैर्ज्येष्ठेभिरर्यमणं वरूथैः ॥१७॥

अग्निदेव यो लोक र परलोक दुवैका लागि कल्याणप्रद छन्। उनी हविले तारणकर्ता र यज्ञसम्पादक हुन्। अमृततुल्य दुध दिएर रित्तिएका गाईलाई फेरि ब्याउने बनाएर दुधालु पार्दछन्। यज्ञमा मित्र, वरुण र अर्यमादेवलाई उत्तम स्तवनले प्रशंसित गर्न सकिन्छ।

तद्बन्धुः सूरिर्दिवि ते धियंधा नाभानेदिष्ठो रपति प्र वेनन्।
सा नो नाभिः परमास्य वा घाहं तत्पश्चा कतिथश्चिदास ॥१८॥

हे द्युलोकमा विद्यमान सूर्यदेव ! तिमीलाई परम बन्धु नाभानेदिष्ठले प्रार्थना गर्दछन्। कर्मशील नाभानेदिष्ठ अङ्गिराले प्रदान गरेका एक हजार गाईको कामना गर्दै स्तुति गर्छन्। द्युलोक हाम्रो र सूर्यको उत्पत्तिस्थल हो। सूर्य र मेरा जन्ममा कति अन्तर छ र ?

इयं मे नाभिरिह मे सधस्थमिमे मे देवा अयमस्मि सर्वः।
द्विजा अह प्रथमजा ऋतस्येदं धेनुरदुहज्जायमाना ॥१९॥

द्युलोक मेरो उत्पत्तिस्थल र आश्रयस्थल हो। सम्पूर्ण देवता मेरा आफ्नै हुन्। म सबैमा विद्यमान छु। द्विजहरू सत्यका स्वरूप ब्रह्माबाट उत्पन्न भएका हुन्। यज्ञका स्वरूप गाईले प्रकट भएर सबैको सृष्टि गरे।

अधासु मन्द्रो अरतिर्विभावाव स्यति द्विवर्तनिर्वनोषाट्।
ऊर्ध्वा यच्छ्रेणिर्न शिशुर्दन्मक्षू स्थिरं शेवृधं सूत माता ॥२०॥

अति आनन्दित भएर अग्निदेव चारैतिर आफ्नो स्थान ग्रहण गर्दछन्। कान्तिमान, काठभक्षक र दुवै लोकका सहायक अग्निको ज्वाला माथि उठ्छ। अति स्तुत्य, स्थायी सुखका प्रवर्द्धक, अग्निकी माताले उनलाई यज्ञमा शीघ्र उत्पन्न गर्दछिन्।

अधा गाव उपमातिं कनाया अनु श्वान्तस्य कस्य चित्परेयुः।
श्रुधि त्वं सुद्रविणो नस्त्वं याडाश्वघ्नस्य वावृधे सूनृताभिः ॥२१॥

श्रेष्ठ स्तोत्रवाणीको उच्चारणले नाभानेदिष्ठलाई शान्ति प्रदान गर्दछ। सबै किसिमका प्रशंसनीय इन्द्रदेवका समीप प्रार्थना जान्छ। हे ऐश्वर्यवान् अग्निदेव ! हाम्रो स्तुतिमा ध्यान देऊ। तिमी इन्द्रदेवको यज्ञ सम्पन्न गराऊ। तिमी अश्वमेध यज्ञ सम्पन्न गर्ने मनु पुत्रका प्रार्थनाले समृद्ध हुन्छौ।

अध त्वमिन्द्र विद्ध्य१स्मान्महो राये नृपते वज्रबाहुः।
रक्षा च नो मघोनः पाहि सूरीननेहसस्ते हरिवो अभिष्टौ ॥२२॥

हे वज्रधारी र नरका अधिपति इन्द्रदेव ! तिमी हाम्रो विपुल ऐश्वर्यकामनाको अभिप्राय जान र बुझ। हामी तिम्रा लागि स्तुति गान गर्दै हविष्यान्न समर्पित गर्दछौं। तिमी हाम्रो संरक्षण गर। हे अश्वले सम्पन्न इन्द्रदेव ! तिम्रा अनुकम्पाले हामी पापमुक्त होऔं।

अध यद्राजाना गविष्टौ सरत्सरण्युः कारवे जरण्युः।
विप्रः प्रेष्ठः स ह्येषां बभूव परा च वक्षदुत पर्षदेनान् ॥२३॥

हे दीप्तिमान् मित्रावरुण ! गाईरूपी धनका कामनाले प्रेरित भएर अङ्गिराहरूले यज्ञ सम्पन्न गर्दछन्। सर्वज्ञाता नाभानेदिष्ठ स्तोत्रका आकाङ्क्षाले यज्ञका समीप जान्छन्। नाभानेदिष्ठले स्तोत्र गाएर यज्ञ सम्पूर्ण गरे। यसैबाट उनी अति ज्ञानी विप्र भए।

अधा न्वस्य जेन्यस्य पुष्टौ वृथा रेभन्त ईमहे तदू नु।
सरण्युरस्य सूनुरश्वो विप्रश्चासि श्रवसश्च सातौ ॥२४॥

हामी श्रद्धापूर्वक स्तुतिगान गर्ने, जयशील र प्रशंसनीय वरुणदेवको अभीष्ट सिद्धिको कामना गर्दछौं। शीघ्रगामी अश्व वरुणदेवका पुत्रजस्तै हुन्। हे वरुणदेव ! तिमी शुद्ध स्वरूप छौ। हामीलाई अन्न लाभबाट लाभान्वित गर्नका लागि प्रेरित होऊ।

युवोर्यदि सख्यायास्मे शर्धाय स्तोमं जुजुषे नमस्वान्।
विश्वत्र यस्मिन्ना गिरः समीचीः पूर्वीव गातुर्दाशत्सूनृतायै ॥२५॥

हे मित्र र वरुणदेव हो ! तिमीहरूको मैत्री भावना बलियो गराउने र बल वृद्धिका लागि अन्नले युक्त ऋत्विकले विनम्रतापूर्वक प्रार्थना गर्दा तिम्रा बन्धुत्व भाव प्राप्त गरेर सम्पूर्ण विश्वमा यज्ञको महिमा विस्तार हुन्छ। चिरपरिचित मार्ग सुखदायक भएझैं तिमीहरूको मैत्री भावना हामी स्तोताका लागि सुखदायक होस्।

स गृणानो अद्भिर्देववानिति सुबन्धुर्नमसा सूक्तैः।
वर्धदुक्थैर्वचोभिरा हि नूनं व्यध्वैति पयस उस्रियायाः ॥२६॥

हे परम बन्धु वरुणदेव ! देवताका सहयोगले नमस्कार र श्रेष्ठ स्तोत्रले स्तुत्य भएर आनन्दपूर्वक समृद्ध हौ। स्तोत्र वचनले देवताहरू चाँडै हामीकहाँ आऊन्। देवताहरूकै निम्ति गाईको दुधका धारा यज्ञमा प्रवाहित हुन्छन्।

त ऊ षु णो महो यजत्रा भूत देवास ऊतये सजोषाः।
ये वाजाँ अनयता वियन्तो ये स्था निचेतारो अमूराः ॥२७॥

हे यजन योग्य देवता हो ! हाम्रो उचित संरक्षणका लागि सङ्गठित होओ। हे ज्ञानी अङ्गिरा हो ! परिश्रमपूर्वक हामीलाई तिमीहरूले बल प्रदान गरेका छौ। तिमीहरूको मोहको दृष्टि सकिएको छ। यस बेला गाईरूपी ऐश्वर्यसम्पदा प्राप्त गर।

[सूक्त - ६२]

ऋषि - नाभानेदिष्ठ। देवता - विश्वेदेवा सावर्णि। छन्द - जगती अनुष्टुप् त्रिष्टुप्।

ये यज्ञेन दक्षिणया समक्ता इन्द्रस्य सख्यममृतत्वमानश।
तेभ्यो भद्रमङ्गिरसो वो अस्तु प्रति गृभ्णीत मानवं सुमेधसः ॥१॥

हे मेधायुक्त अङ्गिरा हो ! हवियोग्य पदार्थ र दक्षिणाले सम्पन्न यज्ञीय सत्कर्मले इन्द्रदेवको बन्धुत्व र अमृतत्त्व उपलब्ध गरेका हौ। उनका निमित्त तिमीहरू सबैको कल्याण होस्। म नभानेदिष्ठलाई पनि यज्ञका लागि स्वीकार गर।

य उदाजन्पितरो गोमयं वस्वृतेनाभिन्दन्परिवत्सरे वलम्।
दीर्घायुत्वमङ्गिरसो वो अस्तु प्रति गृभ्णीत मानवं सुमेधसः ॥२॥

हे पिताजस्तै अङ्गिरा हो ! तिमीहरूले वर्षभरिका सत्यका ज्ञानयज्ञले वल नामका राक्षस उच्छेदन गरेर गाईसँग धनसम्पन्न आवास उपलब्ध गऱ्यौ। तिमीलाई दीर्घायु प्राप्त होस्। हे मेधावीजन हो ! तिमीहरू मनुका पुत्रलाई यज्ञका लागि स्वीकार गर।

य ऋतेन सूर्यमारोहयन् दिव्यप्रथयन्पृथिवीं मातरं वि।
सुप्रजास्त्वमङ्गिरसो वो अस्तु प्रति गृभ्णीत मानवं सुमेधसः ॥३॥

हे अङ्गिरा हो ! तिमीहरूले सत्यरूपी यज्ञका तेजले दिव्य लोकमा सर्वप्रेरक सूर्य प्रतिष्ठित गरायौ र सबैकी निर्मात्री पृथ्वीलाई यज्ञीय सत्कर्मले समृद्ध एवं विख्यात गरायौ। तिमीहरूका प्रजा र सन्तान असल होऊन्। हे श्रेष्ठ ज्ञाननिष्ठ ऋषि हो ! तिमीहरू मनुका पुत्रलाई आफूसाथै राख।

अयं नाभा वदति वल्गु वो गृहे देवपुत्रा ऋषयस्तच्छृणोतन।
सुब्रह्मण्यमङ्गिरसो वो अस्तु प्रति गृभ्णीत मानवं सुमेधसः ॥४॥

हे देवताका पुत्र अङ्गिरा हो ! यो नाभानेदिष्ठ तिमीहरूका यज्ञस्थलमा कल्याणकारी कुरा गर्दछन्। उनको कुरो आदरसहित सुन। तिमीहरू सुहाउँदो ब्रह्मशक्ति प्राप्त गर। हे मेधासम्पन्न श्रेष्ठ अङ्गिरा हो ! तिमीहरू मनुको पुत्र मलाई आफूसँग राख।

विरूपास इदृषयस्त इद्गम्भीरवेपसः।
ते अङ्गिरसः सूनवस्ते अग्नेः परि जज्ञिरे ॥५॥

अङ्गिरा विभिन्न रूपका छन्। यिनी गम्भीर कर्म गर्ने अग्निका पुत्र हुन्। यिनी सबैतिर प्रकट भएका छन्।

ये अग्नेः परि जज्ञिरे विरूपासो दिवस्परि।
नवग्वो नु दशग्वो अङ्गिरस्तमः सचा देवेषु मंहते ॥६॥

विभिन्न रूपका अङ्गिरा दिव्यलोकमा अग्निद्वारा चारैतिर उत्पन्न हुन्छन्। तिनीहरूमध्ये कसैले नौ महिनासम्म र कसैले दस महिनासम्म यज्ञ गरेर तेज प्राप्त गरेका हुन्। देवतासँग रहेका अग्निदेवले हामीलाई श्रेष्ठ धन प्रदान गर्दछन्।

इन्द्रेण युजा निः सृजन्त वाघतो व्रजं गोमन्तमश्विनम्।
सहस्रं मे ददतो अष्टकर्ण्यः श्रवो देवेष्वक्रत ॥७॥

उत्तम तरिकाले यज्ञकर्म सम्पन्न गर्ने अङ्गिराहरूले इन्द्रदेवका सहयोगले अश्व र गाईको समूह प्रकट गरे। ती ऋषिहरूले यज्ञीय अवशिष्ट असङ्ख्य धन हामीलाई दिएर इन्द्र आदि देवतामा आफ्नो यशस्वितालाई प्रख्यात गराऊन्।

प्र नूनं जायतामयं मनुस्तोक्मेव रोहतु। यः सहस्रं शताश्वं सद्यो दानाय मंहते ॥

सयौं गाई र हजारौं अश्व शीघ्रताका साथ ऋषिहरूलाई दान दिनका लागि प्रेरित सावर्णि मनु जलले सेचन गरिएको बिउजस्तै कर्मफलले युक्त भएर सन्तान र धन आदिले सम्पन्न छन्।

न तमश्नोति कश्चन दिव इव सान्वारभम्।
सावर्ण्यस्य दक्षिणा वि सिन्धुरिव पप्रथे ॥९॥

उच्च आकाशमा रहेका तेजस्वी सूर्यजस्तो सावर्णि मनुको जस्तो दान दिने सामर्थ्य अरू कसैमा छैन। सावर्णि मनुको दान सर्वत्र प्रवाहमान नदीझैँ प्रख्यात र विस्तृत छ।

उत दासा परिविषे स्मद्दिष्टी गोपरीणसा। यदुस्तुर्वश्च मामहे ॥१०॥

उत्तम कल्याणकारी, आज्ञाकारी, प्रचुर गाईले युक्त र सेवकजस्तका यदु र तुर्व नामका राजर्षिहरू दुधरूपी भोजन प्राप्त गर्न मनुलाई गाई आदि पशु प्रदान गर्दछन्।

सहस्रदा ग्रामणीर्मा रिषन्मनुः सूर्येणास्य यतमानैतु दक्षिणा।
सावर्णेर्देवाः प्र तिरन्त्वायुर्यस्मिन्नश्रान्ता असनाम वाजम् ॥११॥

हजारौँ गाई दान गर्ने र मानिसका नायकजस्ता मनुको अशुभ गर्न कोही सक्षम छैन। यी मनुले प्रदान गरेको दक्षिणा सूर्यदेवका सहायताले तीनै लोकमा प्रख्यात होस्। सावर्णि मनुको आयु इन्द्र आदि देवताले समृद्ध गरुन्। आलस्यरहित हामी अन्न प्राप्त गरौँ।

[सूक्त - ६३]

ऋषि - गयप्लात। देवता - विश्वेदेवा पथ्या स्वस्ति। छन्द - जगती त्रिष्टुप्।

परावतो ये दिधिषन्त आप्यं मनुप्रीतासो जनिमा विवस्वतः।
ययातेर्ये नहुष्यस्य बर्हिषि देवा आसते ते अधि ब्रुवन्तु नः ॥१॥

इन्द्र आदि देवता दूर देशबाट आएर मानिससित मैत्रीभाव बलियो बनाउँछन्। उनीहरू यज्ञबाट सन्तुष्ट भएर विवस्वान्का पुत्र मनुका मानिस आदि सन्तान धारण गर्दछन्। देवताहरू नहुषका पुत्र ययाति राजाका यज्ञका आसनमा विराजमान हुन्छन्, उनीहरूले हामीलाई ऐश्वर्यसम्पदा प्रदान गरेर सम्माननीय बनाऊन् र हाम्रो प्रगति गरुन्।

विश्वा हि वो नमस्यानि वन्द्या नामानि देवा उत यज्ञियानि वः।
ये स्थ जाता अदितेरद्भ्यस्परि ये पृथिव्यास्ते म इह श्रुता हवम् ॥२॥

हे देवता हो ! तिमीहरूका सबै नाम नमस्कार गर्न योग्य र स्तुति गर्न योग्य छन्, त्यसै गरी सबै अङ्ग यजनीय छन्। तिमीहरू द्युलोक, अन्तरिक्ष र पृथिवीबाट प्रकट भएका छौ, यज्ञमा आएर हाम्रो आह्वान सुन।

येभ्यो माता मधुमत्पिन्वते पयः पीयूषं द्यौरदितिरद्रिबर्हाः।
उक्थशुष्मान् वृषभरान्त्स्वप्नसस्ताँ आदित्याँ अनु मदा स्वस्तये ॥३॥

सबैको निर्माण गर्ने पृथ्वीमा देवताहरूका निम्ति दुधजस्तो मधुर जल प्रवाहित प्रवाहित हुन्छ। देवताकै लागि अविनाशी र मेघले ढाकिएका अन्तरिक्षले अमृत धारण गरेको छ र स्तुत्य यज्ञीय कर्मले अति सामर्थ्यवान् वृष्टिको आश्रय, उत्तमकर्मा ती अदितिका पुत्र देवताको स्तुति गरौँ।

नृचक्षसो अनिमिषन्तो अर्हणा बृहद्देवासो अमृतत्वमानशुः।
ज्योतीरथा अहिमाया अनागसो दिवो वर्ष्माणं वसते स्वस्तये ॥४॥

कर्तव्यनिष्ठ मानिसको हेरविचार गर्न सधैँ जागरुक रहने तेजस्वी देवताहरू उपासना र स्तुतिबाट सर्वत्र पूज्य भएर महिमावान् अमृत पद प्राप्त गर्दछन्। ज्योतिर्मय रथले युक्त, विघ्नरहित र पापरहित देवताहरू द्युलोकका उच्च स्थानमा लोककल्याणका लागि निवास गर्दछन्।

सम्राजो ये सुवृधो यज्ञमाययुरपरिह्वृता दधिरे दिवि क्षयम्।
ताँ आ विवास नमसा सुवृक्तिभिर्महो आदित्याँ अदितिं स्वस्तये ॥५॥

आफ्ना तेजले प्रतिष्ठित र विकसित देवता हविष्यान्न सेवन गर्नका लागि उपस्थित हुन्छन्। पराजयरहित भएर द्युलोकमा निवास गर्ने महिमामय देवतासँगै उनको जननी अदितिलाई मङ्गलका निम्ति श्रेष्ठ हविष्यान्न र विनम्र स्तुति समर्पित गरौँ।

को वः स्तोमं राधति यं जुजोषथ विश्वे देवासो मनुषो यति ष्ठन।
को वोऽध्वरं तुविजाता अरं करद्यो नः पर्षदत्यंहः स्वस्तये ॥६॥

हे देवशक्ति हो ! हाम्रा अतिरिक्त कुन साधक तिमीलाई स्तुति गर्न सक्षम होलान् र कसलाई तिमी स्नेहवश कृपा गर्दछौ ? हे ज्ञानसम्पन्न देवता हो ! हामीलाई पापबाट बचाउने, परम सुखकर र कल्याणमय यज्ञीय सत्कर्मलाई हामीबाहेक कसले स्तुति र आहुतिले सुशोभित गराउन सक्ला ?

येभ्यो होत्रां प्रथमामायेजे मनुः समिद्धाग्निर्मनसा सप्त होतृभिः ।
त आदित्या अभयं शर्म यच्छत सुगा नः कर्त सुपथा स्वस्तये ॥७॥

वैवस्वत् मनुले अग्नि प्रज्वलित गरेर श्रद्धापूर्ण मनले सात ऋत्विकहरूसँग देवताका लागि श्रेष्ठ हविरूपी द्रव्य समर्पित गरे। ती अदितिका पुत्रले हामीलाई अभय र सुख प्रदान गरून् र हाम्रो मङ्गल गर्नका लागि कर्तव्यमार्ग सुगम बनाऊन् ।

य ईशिरे भुवनस्य प्रचेतसो विश्वस्य स्थातुर्जगतश्च मन्तवः ।
ते नः कृतादकृतादेनसस्पर्यद्या देवासः पिपृता स्वस्तये ॥८॥

श्रेष्ठ ज्ञानले सम्पन्न र मननीय देवताहरू स्थावर र जङ्गम सबै लोकका अधीश्वर हुन्। हे देवशक्ति हो ! हाम्रो कल्याण र सुखका लागि तिमीहरू चाहा भएका वा नभएका सबै मानसिक पापकर्मबाट हामीलाई संरक्षित गर।

भरेष्विन्द्रं सुहवं हवामहेंऽहोमुचं सुकृतं दैव्यं जनम् ।
अग्निं मित्रं वरुणं सातये भगं द्यावापृथिवी मरुतः स्वस्तये ॥९॥

हामी सङ्ग्राममा शत्रुबाट जोगिनका लागि पापका मुक्तिदाता, सुखदायक इन्द्रदेवलाई आह्वान गर्दछौँ। श्रेष्ठ कर्मशील, दैवी गुणसम्पन्न, मनुष्य र अग्नि, वरुण तथा भग नामका देवलाई पनि सहयोगका लागि हामी आमन्त्रित गर्दछौँ। द्युलोक, पृथिवी र मरुत्‌हरूलाई अन्न र कल्याणका लागि आह्वान गर्दछौँ।

सुत्रामाणं पृथिवीं द्यामनेहसं सुशर्माणमदितिं सुप्रणीतिम् ।
दैवीं नावं स्वरित्रामनागसमस्रवन्तीमा रुहेमा स्वस्तये ॥१०॥

भर पर्दो गरी रक्षा गर्ने, पर्याप्त रूपमा विस्तृत, अत्यधिक विशाल, सुखदायक श्रेष्ठ आश्रय प्रदान गर्ने, निर्दोष, उत्तम पतवारसहितको, प्वाल नपरेको, मृत्युका भयबाट जोगाउने, दिव्य र अखण्डित द्युलोकका यज्ञीय नौकामा हामी आरुढ होऔँ र त्यसबाट हाम्रो भलो होस्।

विश्वे यजत्रा अधि वोचतोतये त्रायध्वं नो दुरेवाया अभिह्रुतः ।
सत्यया वो देवहूत्या हुवेम शृण्वतो देवा अवसे स्वस्तये ॥११॥

हे यजनीय देवता हो ! तिमीहरू हामीलाई संरक्षणको आश्वासन प्रदान गर। सर्वत्र विनाशक दुर्गतिबाट सुरक्षित गर। हे देवता हो ! तिमीहरू हाम्रो सत्यस्वरूपको आदरभावले युक्त प्रार्थना सुन्दै हाम्रो संरक्षण र कल्याणका लागि आओ।

अपामीवामप विश्वामनाहुतिमपारातिं दुर्विदत्रामघायतः ।
आरे देवा द्वेषो अस्मद्युयोतनोरु णः शर्म यच्छता स्वस्तये ॥१२॥

हे देवता हो ! तिमीहरू हाम्रो रोग र त्यसै खालका बाधक शत्रु निवारण गर। सबै किसिमको दानरहित बुद्धि र देवताविरोधी शत्रु पर हटाओ। तिमीहरू धनका लोभी, दुर्बुद्धि र देवताका लागि हविष्यान्नले रहित शत्रु पर भगाओ। हामीसित सम्बन्धित शत्रुको वैरभाव निवारण गर र कल्याणका लागि प्रचुर सुखसम्पदा प्रदान गर।

अरिष्टः स मर्तो विश्व एधते प्र प्रजाभिर्जायते धर्मणस्परि ।
यमादित्यासो नयथा सुनीतिभिरति विश्वानि दुरिता स्वस्तये ॥१३॥

हे आदित्य हो ! तिमीहरू मानिसलाई देखादेखि पापकर्मबाट जोगाएर कल्याणकारी पथमा प्रेरित गर्दछौ। मानिसहरू सबै खालका अनिष्टरहित भएर प्रगतिपथमा अग्रसर हुन्छन्। तिनीहरू सत्यरूपी धर्मको आचरणले सुसन्तति र पशु आदिले सम्पन्न हुन्छन्।

यं देवासोऽवथ वाजसातौ यं शूरसाता मरुतो हिते धने ।
प्रातर्यावाणं रथमिन्द्र सानसिमरिष्यन्तमा रुहेमा स्वस्तये ॥१४॥

देवता हो ! अन्न सामग्री प्राप्त गर्न तिमीहरू रथ चलाउँछौ। हे मरुत्‌हरू हो ! वीरका लागि उचित सङ्ग्राममा शत्रुले जोगाएको सम्पत्ति प्राप्त गर्न तिमीहरू रथ जोगाउँछौ। हे इन्द्रदेव ! सङ्ग्राममा जीत लिनेका त्यही रथ बिहानीपख माग्ने कामना गर। यस्तो ध्वस्त नहुने रथमा आरुढ भएर हामी कल्याणका मार्गमा अग्रगामी होऔँ।

स्वस्ति नः पथ्यासु धन्वसु स्वस्त्य१प्सु वृजने स्वर्वति।
स्वस्ति नः पुत्रकृथेषु योनिषु स्वस्ति राये मरुतो दधातन ॥१५॥

मार्ग, मरुस्थल, जलका बीच र युद्धक्षेत्र आदि सबै ठाउँ हाम्रा लागि कल्याणकारी होऊन्। अस्त्रआदिको प्रयोग भइरहेका सेनाका बीचमा पनि हाम्रो भलो नै होस्। सन्तान उत्पन्न गर्ने स्त्रीको गर्भ, शिशु र घरको हित होस्। हे देवता हो ! हाम्रो धन आदि ऐश्वर्य लाभका लागि तिमीहरू मङ्गलमय होओ।

स्वस्तिरिद्धि प्रपथे श्रेष्ठा रेक्णस्वत्यभि या वाममेति।
सा नो अमा सो अरणे नि पातु स्वावेशा भवतु देवगोपा ॥१६॥

पृथ्वी युद्धभूमिमा जाने मानिसका लागि कल्याणकारिणी छन् र श्रेष्ठ ऐश्वर्यशालिनी भएर अर्काका लागि सुख प्रदान गर्दछिन्। पृथ्वीले हाम्रो घर संरक्षित गरुन्, उनैले वन प्रदेशको पनि रक्षा गरुन्। हे देवताहरूबाट संरक्षित पृथिवी ! हाम्रा लागि तिमी उत्तम आश्रययुक्त सिद्ध होऊ।

एवा प्लतेः सूनुरवीवृधद्वो विश्व आदित्या अदिते मनीषी।
ईशानासो नरो अमर्त्येनास्तावि जनो दिव्यो गयेन ॥१७॥

हे सम्पूर्ण देवता र देवमाता अदिति ! ज्ञानले सम्पन्न स्तोता प्लात ऋषिका पुत्र गयले तिमीहरूलाई स्तुति प्रार्थनाले राम्रोसित समृद्ध पारेका छन्। अविनाशी देवताका कृपाले मानिस ऐश्वर्यका स्वामी हुन्छन्। दिव्य गय तिमी देवताहरू स्तुति गर्दछन्।

## [सूक्त - ६४]

**ऋषि** - गय प्लात। **देवता** - विश्वेदेवा। **छन्द** - जगती त्रिष्टुप्।

कथा देवानां कतमस्य यामनि सुमन्तु नाम शृण्वतां मनामहे।
को मृळाति कतमो नो मयस्करत्कतम ऊती अभ्या ववर्तति ॥१॥

यज्ञमा हाम्रो प्रार्थना स्वीकार गर्ने कुन देवताप्रति कस्ता खालका मननीय स्तोत्र कुन तरिकाले हामी प्रस्तुत गरौं ? कुन देवताले हामीमाथि कृपा गरेर कल्याणकारी सुख प्रदान गर्छन् ? कुन देवता हाम्रो संरक्षणका लागि हाम्रा यज्ञमा उपस्थित हुन्छन् ?

क्रतूयन्ति क्रतवो हृत्सु धीतयो वेनन्ति वेनाः पतयन्त्या दिशः।
न मर्डिता विद्यते अन्य एभ्यो देवेषु मे अधि कामा अयंसत ॥२॥

हाम्रा विवेकबुद्धिले हामीलाई अग्निहोत्र कर्म गर्ने प्रेरणा प्रदान गर्दछ। तेजसम्पन्न व्यक्ति देवताको कामना गर्दछन्। हाम्रो अभिलाषा देवताको अनुसरण गर्ने हुन्छ। उनै देवताका अतिरिक्त अन्य कुनै पनि सुखदायक छैनन्। इन्द्र आदि देवतामा नै हाम्रो अभिलाषा स्थित छ।

नरा वा शंसं पूषणमगोह्यमग्निं देवेद्धमभ्यर्चसे गिरा।
सूर्यामासा चन्द्रमसा यमं दिवि त्रितं वातमुषसमक्तुमश्विना ॥३॥

हे साधक हो ! मानिसबाट स्तुत्य, अगम्य, पूषादेवको प्रार्थना गर र देवतामध्ये प्रज्वलित अग्निको स्तुति गर। तिमीहरू सबै आआफ्ना वाणीले सूर्य, चन्द्र, यम, तीनै लोकमा व्याप्त वायु, उषा, रात्रि र अश्विनीकुमारको स्तुति गर।

कथा कविस्तुवीरवान्कया गिरा बृहस्पतिर्वावृधते सुवृक्तिभिः।
अज एकपात्सुहवेभिर्ऋक्वभिरहिः शृणोतु बुध्न्यो३ हवीमनि ॥४॥

ज्ञानसम्पन्न अग्निदेव कसरी असङ्ख्य स्तोताले युक्त छन् र कुन वाणीले सम्माननीय हुन्छन् ? श्रेष्ठ स्तोत्र वाणीले बृहस्पतिदेव हर्षित भएर बढ्दछन्। अजएकपात् र अहिर्बुध्न्य देवता आह्वान गरिँदा खुसी भएर हाम्रो श्रेष्ठ मन्त्रयुक्त स्तोत्र सुनून्।

दक्षस्य वादिते जन्मनि व्रते राजाना मित्रावरुणा विवाससि।
अतूर्तपन्था पुरुरथो अर्यमा सप्तहोता विषुरूपेषु जन्मसु ॥५॥

हे अदिति ! दक्षको जन्म हुँदा तिमी प्रकाशमान मित्रावरुणको सेवा गर्दछ्यौ। विभिन्न प्रकारका स्वरूपमा जन्म लिने सप्त होता अर्यमा अविचलित मार्गमा हिँडाउने सुखका साधनले युक्त रथले सम्पन्न हुन्छन्।

ते नो अर्वन्तो हवनश्रुतो हवं विश्वे शृण्वन्तु वाजिनो मितद्रवः।
सहस्रसा मेधसाताविव त्मना महो ये धनं समिथेषु जभ्रिरे ॥६॥

इन्द्रदेवका अश्वले सङ्ग्रामका समयमा शत्रुको विशाल धन आफूखुसी वहन गर्दछन्। उनी यज्ञ कालमा सधैं हजारौं किसिमका ऐश्वर्य प्रदान गर्दछन् र कुशल अश्वको जस्तै शीघ्र गतिले पाइला सार्छन्। ती सबैले हाम्रो आह्वान सुनून् र आमन्त्रण कहिल्यै अस्वीकार गर्नेछैनन्।

प्र वो वायुं रथयुजं पुरन्धिं स्तोमैः कृणुध्वं सख्याय पूषणम्।
ते हि देवस्य सवितुः सवीमनि क्रतुं सचन्ते सचितः सचेतसः ॥७॥

हे स्तोता हो ! तिमीहरू रथ योजित गर्ने वायु, विपुल कर्म गर्ने इन्द्रदेव र पूषादेवलाई श्रेष्ठ स्तुति गरेर आफ्नो मैत्रीका लागि आमन्त्रित गर। ती सबैले एकै किसिमका मनले सर्वप्रेरक सवितादेवका यज्ञमा बिहानीकै समयमा आएर विराजमान हुन्छन्।

त्रिः सप्त सस्रा नद्यो महीरपो वनस्पतीन्पर्वताँ अग्निमूतये।
कृशानुमस्तॄन्तिष्यं सधस्थ आ रुद्रं रुद्रेषु रुद्रियं हवामहे ॥८॥

तीनै लोकमा निरन्तर सञ्चारित सात किसिमका प्रवाह, निरन्तर सञ्चरणशील सात सागर, वनस्पति, पर्वत, अग्नि, कृशानु नामका सोमपालक गन्धर्व, वाण चलाउने अनुचर गन्धर्व, पुष्य नक्षत्र, हविको भागका लागि योग्य रुद्र र रुद्रगणमा श्रेष्ठ रुद्रलाई हामी यज्ञको संरक्षणका लागि आह्वान गर्दछौं।

सरस्वती सरयुः सिन्धुरूर्मिभिर्महो महीरवसा यन्तु वक्षणीः।
देवीरापो मातरः सूदयित्न्वो घृतवत्पयो मधुमन्नो अर्चत ॥९॥

महान् पूजनीय र तरङ्गयुक्त तीन लोकका सातसात धारा हाम्रो संरक्षण गरुन्। माताजस्तै र जलका प्रेरक सबै देवीले घिउजस्तै पुष्टिदायक र महजस्तै पोषण प्रदान गरुन्।

उत माता बृहद्दिवा शृणोतु नस्त्वष्टा देवेभिर्जनिभिः पिता वचः।
ऋभुक्षा वाजो रथस्पतिर्भगो रण्वः शंसः शशमानस्य पातु नः ॥१०॥

तेजस्विनी देवमाताले हाम्रो निवेदन सुनून्। देवपिता त्वष्टाले आफ्ना पुत्र देवता र उनका पत्नीहरूसँग हाम्रा वचनको अभिप्राय बुझिदिऊन्। इन्द्र, वाज, रथपति भगदेव र स्तुत्य मरुत्हरूले हामी स्तोताको रक्षा गरुन्।

रण्वः संदृष्टौ पितुमाँ इव क्षयो भद्रा रुद्राणां मरुतामुपस्तुतिः।
गोभिः ष्याम यशसो जनेष्वा सदा देवास इळया सचेमहि ॥११॥

देखामा राम्रा मरुत्हरू अन्नले परिपूर्ण आवासगृहजस्तै छन्। रुद्रका पुत्र मरुत्हरूको प्रशंसनीय प्रार्थना अत्यन्त कल्याणकारी छ। मानिसहरूमा हामी गाई आदि पशुधनले युक्त भएर यशस्वी बनौं। हे देवता हो ! हामीलाई सधैं अन्नले सम्पन्न बनाओ।

यां मे धियं मरुत इन्द्र देवा अददात वरुण मित्र यूयम्।
तां पीपयत पयसेव धेनुं कुविद्गिरो अधि रथे वहाथ ॥१२॥

हे मरुत्गण, इन्द्र, देवतागण, वरुण र मित्र हो ! दुधले गाई भरिपूर्ण भएझैं हामीलाई असल कर्मले अभीष्ट फलयुक्त गराओ। तिमीहरू स्तोत्र सुनेपछि रथमा हाम्रा यज्ञमा आएका छौ।

कुविदङ्ग प्रति यथा चिदस्य नः सजात्यस्य मरुतो बुबोधथ।
नाभा यत्र प्रथमं संनसामहे तत्र जामित्वमदितिर्दधातु नः ॥१३॥

हे मरुत्हरू हो ! तिमीहरूले यसभन्दा पहिले पनि अनेकौं पटक हामीसित बन्धुत्वको सम्बन्ध बनाएका छौ। यज्ञस्थलको केन्द्रमा हामी सबैभन्दा पहिले तिमीहरूलाई अर्चना गर्दछौं। देवमाता अदितिले हामी मानिसबीचको आपसी बन्धुत्व बलियो पारुन्।

ते हि द्यावापृथिवी मातरा मही देवी देवाञ्जन्मना यज्ञिय इतः।
उभे बिभृत उभयं भरीमभिः पुरू रेतांसि पितृभिश्च सिञ्चतः ॥१४॥

सम्पूर्ण विश्वको सृष्टि गर्ने, महिमासम्पन्न दीप्तिमान् र यजनयोग्य द्यावापृथिवी प्रकट हुनेबित्तिकै इन्द्र आदि देवतालाई प्राप्त गर्दछन्। द्युलोक र पृथिवीलोक यी दुवैलाई अनेकौं किसिमले भरणपोषण गर्न काम लाग्ने अन्नजल आदिले देवता र मानिसलाई पोषण गर्दछन्। पालनकर्ता देवताका सहयोगले विपुल तेजको सेचन हुन्छ।

वि षा होत्रा विश्वमश्नोति वार्यं बृहस्पतिररमतिः पनीयसी।
ग्रावा यत्र मधुषुदुच्यते बृहदवीवशन्त मतिभिर्मनीषिणः ॥१५॥

सबैलाई बोलाउने माध्यमका रूपमा वाणी रहेको हुन्छ। त्यसले सबै खालका श्रेष्ठ ऐश्वर्य व्याप्त गराउँछ। महान् गुणको पालक, स्तुतियुक्त हुनाले देवताका निमित्त उसैले स्तोत्र प्रकट गर्दछ। यहाँ सोम पेल्ने ढुङ्गा पनि सुशोभित छन्, यस्ता स्तवनीय यज्ञमा स्तोताहरू आफ्ना प्रार्थनाले देवतालाई यज्ञतिर अभिमुख गराउँछन्।

एवा कविस्तुवीरवाँ ऋतजा द्रविणस्युर्द्रविणसश्चकानः।
उक्थेभिरत्र मतिभिश्च विप्रोऽपीपयद्गयो दिव्यानि जन्म ॥१६॥

क्रान्तदर्शी, धेरैको स्तुति प्राप्त गर्ने, यज्ञका विशेषज्ञ, पशु आदि ऐश्वर्य कामना गर्ने, ज्ञानले सम्पन्न गय ऋषिका वचन र स्तुतिले अलौकिक देवताको प्रार्थना गरे।

एवा प्लतेः सूनुरवीवृधद्वो विश्व आदित्या अदिते मनीषी।
ईशानासो नरो अमर्त्येनास्तावि जनो दिव्यो गयेन ॥१७॥

हे देवता र देवमाता अदिति ! ज्ञानको खोजीमा संलग्न, सत्यको आचरण जात्रे, स्तोता प्लात ऋषिका पुत्र गयले स्तुतिका माध्यमले तिमीहरूलाई संवर्द्धित गरे। देवताका अनुग्रहले मानिस ऐश्वर्यसम्पन्न हुन्छ। अतः गय दिव्यजनको स्तुति गर्छन्।

[सूक्त - ६५]

ऋषि - वसुकर्ण वासुक्र। देवता - विश्वेदेवा। छन्द - जगती त्रिष्टुप्।

अग्निरिन्द्रो वरुणो मित्रो अर्यमा वायुः पूषा सरस्वती सजोषसः।
आदित्या विष्णुर्मरुतः स्वर्बृहत् सोमो रुद्रो अदितिर्ब्रह्मणस्पतिः ॥१॥

अग्नि, इन्द्र, वरुण, मित्र, अर्यमा, वायु, पूषा, सरस्वती, आदित्यगण, विष्णु, मरुत्गण, स्वर्ग, सोम, रुद्र, अदिति र ब्रह्मणस्पति आदि सबै देवता परस्पर सङ्गठित भएर आफ्नै महिमाले यस महान् अन्तरिक्षलाई समृद्ध गर्दछन्।

इन्द्राग्नी वृत्रहत्येषु सत्पती मिथो हिन्वाना तन्वाऽ समोकसा।
अन्तरिक्षं मह्या पप्रुरोजसा सोमो घृतश्रीर्महिमानीरयन् ॥२॥

इन्द्र र अग्निदेव सज्जनका संरक्षक हुन्। उनीहरू सङ्ग्राममा संयुक्त भएर आफ्ना शारीरिक सामर्थ्यले शत्रु विनाश गर्दछन् र व्यापक अन्तरिक्षलाई आफ्ना तेजले परिपूर्ण गराउँछन्। तेजस्वी सोमबाट उनको बल बढ्दछ।

तेषां हि मह्ना महतामनर्वणा स्तोमाँ इयर्म्यृतज्ञा ऋतावृधाम्।
ये अप्सवमर्णवं चित्रराधसस्ते नो रासन्तां महये सुमित्र्याः ॥३॥

महान्तम, अपराजेय र सत्यरूपी यज्ञ बढाउने देवताका निम्ति हामी यज्ञको ज्ञान हुने याज्ञिक स्तुतिवाणी प्रयोग गर्दछौं। अत्यन्त आश्चर्य लाग्दो, ऐश्वर्यका अधिपति पानी बर्साउने श्रेष्ठ मित्ररूपी देवताले हामीलाई ऐश्वर्यसँगै श्रेष्ठता प्रदान गरून्।

स्वर्णरमन्तरिक्षाणि रोचना द्यावाभूमी पृथिवीं स्कम्भुरोजसा।
पृक्षा इव महयन्तः सुरातयो देवाः स्तवन्ते मनुषाय सूरयः ॥४॥

सबैका नायक सूर्य, आकाशमा रहेका ग्रह, नक्षत्र, तेज, द्युलोक, पृथिवी र व्यापक पृथ्वीलाई उनै देवताले आफ्ना सामर्थ्यले यथास्थानमा अड्याएका छन्। धनदाताझैं भएर साधकलाई श्रेष्ठ दान दिने देवता मानिसलाई असल बनाउँछन्। त्यसैले यिनको प्रार्थना गरिन्छ।

मित्राय शिक्ष वरुणाय दाशुषे या सम्राजा मनसा न प्रयुच्छतः।
ययोर्धाम धर्मणा रोचते बृहद् ययोरुभे रोदसी नाधसी वृतौ ॥५॥

दानी मित्र र वरुणदेवलाई हविष्यान्न समर्पित गरौं। यी दुवै सम्राट मित्र र वरुणदेव कहिल्यै मानसिक भुल गर्दैनन्। यिनीहरूको धाम लोककल्याणकारी सत्कर्मले प्रकट भएको हो। द्यावापृथिवी यी दुवैका सामु याचकजस्तै बनेर रहेका छन्।

या गौर्वर्तनिं पर्येति निष्कृतं पयो दुहाना व्रतनीरवारतः।
सा प्रब्रुवाणा वरुणाय दाशुषे देवेभ्यो दाशद्धविषा विवस्वते ॥६॥

आफैं बाटो काट्ने दुधालु गाई स्तुतिले प्रभावित भएर हाम्रो यज्ञ परिपूर्ण गराउँछन्। हामले प्रशंसा

गरेका यी गाई, दाता वरुणदेव र अन्य देवतालाई यजनीय पदार्थ प्रदान गरुन् र हामी देवत्वको संवर्द्धन गर्ने लोकसेवीलाई संरक्षण प्रदान गरुन्।

**दिवक्षसो अग्निजिह्वा ऋतावृध ऋतस्य योनिं विमृशन्त आसते।**
**द्यां स्कभित्व्यप आ चक्रुरोजसा यज्ञं जनित्वी तन्वी३ नि मामृजुः ॥७॥**

आफ्ना तेजले आकाशमा व्याप्त अग्निदेवता ज्वालारूपी जिब्रो भएका र यज्ञसंवर्द्धक छन्। उनी यज्ञस्थलमा आआफ्ना निर्धारित स्थानमा विराजमान हुन्छन्। उनी अन्तरिक्ष धारण गरेर आफ्ना तेजस्वी बलले पानीको गतिचक्र चलाउँछन् र यजनीय हविष्यान्नले आफ्नो शरीर सुशोभित गराउँछन्।

**परिक्षिता पितरा पूर्वजावरी ऋतस्य योना क्षयतः समोकसा।**
**द्यावापृथिवी वरुणाय सव्रते घृतवत्पयो महिषाय पिन्वतः ॥८॥**

सर्वव्यापी, सबैका मातापिताजस्ता, सर्वप्रथम उत्पन्न, सहयोगका भावले रहने द्युलोक र पृथिवीलोक दुवै यज्ञस्थलमा रहन्छन्। दुवै समान मनले युक्त भएर अति वन्दनीय वरुणदेवको प्रसन्नताका लागि घिउको जस्तै पोषण बर्साउँछन्।

**पर्जन्यावाता वृषभा पुरीषिणेन्द्रवायू वरुणो मित्रो अर्यमा।**
**देवाँ आदित्याँ अदितिं हवामहे ये पार्थिवासो दिव्यासो अप्सु ये ॥९॥**

मेघ र वायु यी दुवैले अभीष्ट कामनाको वर्षा गराउने जल धारण गर्दछन्। इन्द्र, वायु, वरुण, मित्र, अर्यमा, अदितिका पुत्र तथा आदित्य देवलाई हामी आवाहित गर्दछौं। पृथ्वी, द्युलोक र अन्तरिक्ष लोकमा प्रकट भएका देवतालाई हामी आह्वान गर्दछौं।

**त्वष्टारं वायुमृभवो य ओहते दैव्या होतारा उषसं स्वस्तये।**
**बृहस्पतिं वृत्रखादं सुमेधसमिन्द्रियं सोमं धनसा उ ईमहे ॥१०॥**

हे ऋभु हो ! सोमदेव तिमीहरूको कल्याणका लागि त्वष्टा, वायु आदि देवतालाई आमन्त्रण गर्दै देवी उषाका नजिक जान्छन्। बृहस्पति श्रेष्ठ ज्ञानले सम्पन्न र वृत्रहन्ता इन्द्रदेवका समीपमा जान्छन्। इन्द्रदेवको सन्तुष्टिका लागि सोमदेवसहित हामी ऐश्वर्य कामना गर्दछौं।

**ब्रह्म गामश्वं जनयन्त ओषधीर्वनस्पतीन्पृथिवीं पर्वताँ अपः।**
**सूर्यं दिवि रोहयन्तः सुदानव आर्या व्रता विसृजन्तो अधि क्षमि ॥११॥**

देवताले अन्न, गाई, अश्व, औषधि, वनस्पति, व्यापक धर्ती, पर्वत र जल उत्पन्न गरेका छन्। उनी आकाशमा सूर्यदेवलाई स्थापित गर्दछन्। श्रेष्ठ दानदाता देवताहरू भूलोकका सबै स्थानमा विद्यमान छन्। उनीहरूबाट नै श्रेष्ठ हितकारी यज्ञ आदि सत्कर्मको प्रसार भएको छ। उनीहरूबाट हामी धनको कामना गर्दछौं।

**भुज्युमंहसः पिपृथो निरश्विना श्यावं पुत्रं वध्रिमत्या अजिन्वतम्।**
**कमद्युवं विमदायोहथुर्युवं विष्णाप्वं विश्वकायाव सृजथः ॥१२॥**

हे अश्विनीकुमार हो ! तिमीहरूले भुज्युलाई बचाएर आपद् निवारण गर्‍यौ र वध्रिमतीलाई श्याव नामको पुत्र प्रदान गर्‍यौ। विमद ऋषिलाई कमद्यु नामकी असल भार्या प्रदान गर्‍यौ र विश्वक ऋषिलाई विष्णाप्व नामको पुत्र प्रदान गर्‍यौ।

**पावीरवी तन्यतुरेकपादजो दिवो धर्ता सिन्धुरापः समुद्रियः।**
**विश्वे देवासः शृणवन्वचांसि मे सरस्वती सह धीभिः पुरन्ध्या ॥१३॥**

आयुधधारी, मधुर वाणी, आकाश धारणकर्ता अजएकपाद, सिन्धु, आकाशको जल, सम्पूर्ण देवता, विभिन्न कर्म र ज्ञानले सम्पन्न सरस्वतीले हाम्रो स्तोत्र सुनून्।

**विश्वे देवाः सह धीभिः पुरन्ध्या मनोर्यजत्रा अमृता ऋतज्ञाः।**
**रातिषाचो अभिषाचः स्वर्विदः स्वर्गिरो ब्रह्म सूक्तं जुषेरत ॥१४॥**

अनेकौं सत्कर्म र सद्ज्ञानले सम्पन्न मनुपुत्रका यज्ञमा यजनयोग्य, अमरस्वरूप, सत्य-ज्ञाता, हवि धारण गर्ने, यज्ञमा संयुक्त रूपले विराजमान रहने र सर्वज्ञ इन्द्र आदि देवताले हाम्रो प्रार्थना र मन्त्रको उच्चारणद्वारा समर्पित उत्तम अन्न ग्रहण गरुन्।

**देवान्वसिष्ठो अमृतान्ववन्दे ये विश्वा भुवनाभि प्रतस्थुः।**
**ते नो रासन्तामुरुगायमद्य यूयं पात स्वस्तिभिः सदा नः ॥१५॥**

वसिष्ठ कुलमा उत्पन्न ऋषिले अमर देवताको अर्चना गरे। सबै लोकमा आफ्ना तेजले विद्यमान देवताहरूले हामीलाई श्रेष्ठ र यशस्वी अन्न दिऊन्। हे देवता हो ! तिमीहरू हाम्रा लागि कल्याणकारी भएर सधैं हाम्रो संरक्षण गर।

[सूक्त - ६६]

**ऋषि** - वसुकर्ण वासुक्र। **देवता** - विश्वेदेवा। **छन्द** - जगती त्रिष्टुप्।

**देवान्हुवे बृहच्छ्रवसः स्वस्तये ज्योतिष्कृतो अध्वरस्य प्रचेतसः।**
**ये वावृधुः प्रतरं विश्ववेदस इन्द्रज्येष्ठासो अमृता ऋतावृधः ॥१॥**

विपुल अन्नसम्पन्न, ज्योति सिर्जना गर्ने, श्रेष्ठ ज्ञानसम्पन्न इन्द्रदेवलाई अग्रज मान्ने, अमर र यज्ञले वृद्धि हुने देवतालाई यज्ञको निर्विघ्न समाप्तिका लागि आह्वान गर्दछौं।

**इन्द्रप्रसूता वरुणप्रशिष्टा ये सूर्यस्य ज्योतिषो भागमानशुः।**
**मरुद्गणे वृजने मन्म धीमहि माघोने यज्ञं जनयन्त सूरयः ॥२॥**

इन्द्रदेवद्वारा कर्ममा प्रेरित र वरुणदेवद्वारा श्रेष्ठ रीतिले अनुमोदन युक्त भएर देवताले तेजस्वी सूर्यदेवको मार्ग प्रशस्त गराए। शत्रुविनाशक इन्द्रदेवसहित मरुत्हरूको स्तोत्र हामी बुद्धिमा धारण गर्दछौं। ज्ञानीहरूले यज्ञ सम्पन्न गरुन्।

**इन्द्रो वसुभिः परि पातु नो गयमादित्यैर्नो अदितिः शर्म यच्छतु।**
**रुद्रो रुद्रेभिर्देवो मृळयाति नस्त्वष्टा नो ग्नाभिः सुविताय जिन्वतु ॥३॥**

वसुहरूका सहयोगले इन्द्रले हाम्रो घर संरक्षित गरुन्, आदित्यगणसँग देवमाता अदितिले हामीलाई सुख प्रदान गरुन्, मरुत्गणसँग रुद्रदेवले सुखी गरुन् र त्वष्टादेवले देवपत्नीहरूसँग हामीलाई हर्ष प्रदान गरुन्।

**अदितिर्द्यावापृथिवी ऋतं महदिन्द्राविष्णू मरुतः स्वर्बृहत्।**
**देवाँ आदित्याँ अवसे हवामहे वसून् रुद्रान्त्सवितारं सुदंससम् ॥४॥**

देवमाता अदिति, द्यावापृथिवी, महिमामय सत्यरूप अग्नि, इन्द्र, विष्णु, मरुत्गण, आदित्यदेव आदि सम्पूर्ण देवता, वसु, रुद्र, सुकर्मा र सवितादेवलाई पनि हामी आफ्नो संरक्षणका लागि बोलाउँछौं।

**सरस्वान्धीभिर्वरुणो धृतव्रतः पूषा विष्णुर्महिमा वायुरश्विना।**
**ब्रह्मकृतो अमृता विश्ववेदसः शर्म नो यंसन् त्रिवरूथमंहसः ॥५॥**

ज्ञानवान् समुद्र, कर्मनिष्ठ वरुण, पूषा, महिमायुक्त विष्णु, वायु, अश्विनीदेव, स्तोतालाई अन्न प्रदान गर्ने, ज्ञानी, पापकर्मका विध्वंसक र अविनाशी देवताले हामीलाई तीन खण्ड भएको दिव्य आश्रय प्रदान गरुन्।

**वृषा यज्ञो वृषणः सन्तु यज्ञिया वृषणो देवा वृषणो हविष्कृतः।**
**वृषणा द्यावापृथिवी ऋतावरी वृषा पर्जन्यो वृषणो वृषस्तुभः ॥६॥**

यज्ञले हाम्रो अभीष्ट फल पूरा गरोस्। यजनीय देवताले सुख प्रदान गरुन्। देवता, हविष्यान्न सङ्ग्रह गर्ने, यज्ञका अधिष्ठाता, द्युलोक, पृथ्वीलोक, पर्जन्यका अधिपति र स्तोता यी सबै हाम्रो कामना पूर्ति गर्नमा सहायक होऊन्।

**अग्नीषोमा वृषणा वाजसातये पुरुप्रशस्ता वृषणा उप ब्रुवे।**
**यावीजिरे वृषणो देवयज्यया ता नः शर्म त्रिवरूथं वि यंसतः ॥७॥**

जल वर्षा गराउने, धेरैले स्तुति गर्ने अग्निदेव र सोमदेवलाई हामी अन्न प्राप्तिका लागि प्रार्थना गर्दछौं। यज्ञीय कर्ममा ऋत्विक्लाई अभीष्ट कामना पूरा गराउने रूपमा प्रशंसित देवताले हामीलाई तीन तहको आश्रय प्रदान गरुन्।

**धृतव्रताः क्षत्रिया यज्ञनिष्कृतो बृहद्दिवा अध्वराणामभिश्रियः।**
**अग्निहोतार ऋतसापो अद्रुहोऽपो असृजन्ननु वृत्रतूर्ये ॥८॥**

कर्तव्यरूपी धर्म निर्वाहमा सङ्कल्पित, शक्तिशाली, यज्ञलाई शोभायमान गर्ने, महान् दीप्तिमान, यज्ञीय कर्मलाई श्रेय प्रदान गर्ने, अग्निलाई आह्वान गर्ने, सत्यको नियममा चल्ने, द्रोहको भावना नभएका गुणले सम्पन्न देवताले वृत्रासुरसित युद्ध गर्दा जलको सिर्जना गरे।

द्यावापृथिवी जनयन्नभि व्रताप ओषधीर्वनिनानि यज्ञिया ।
अन्तरिक्षं स्वरा पप्रुरूतये वशं देवासस्तन्वी३ नि मामृजुः ॥९॥

देवताहरूले द्युलोक र भूलोकलाई लक्ष्य गरेर आफ्ना शुभकर्मद्वारा जल, औषधि र यजनीय वृक्षले भरिएको वन प्रकट गरेर आफ्ना तेजले स्वर्गलोक र अन्तरिक्ष व्याप्त गराए । उनै देवताले यज्ञसित स्वयं आफूलाई समाहित गरेर यज्ञ शोभायमान गरे ।

धर्तारो दिव ऋभवः सुहस्ता वातापर्जन्या महिषस्य तन्यतोः ।
आप ओषधीः प्र तिरन्तु नो गिरो भगो रातिर्वाजिनो यन्तु मे हवम् ॥१०॥

दिव्यलोक धारण गर्ने, श्रेष्ठ आयुधले युक्त, ऋभुदेव, विशाल शब्दको ध्वनि गर्ने वायु र पर्जन्य, वनस्पतिले हाम्रो स्तुति विकसित गराऊन् । धन प्रदान गर्ने भगदेव र अर्यमादेव हाम्रा यज्ञमा आऊन् ।

समुद्रः सिन्धू रजो अन्तरिक्षमज एकपात्तनयित्नुरर्णवः ।
अहिर्बुध्न्यः शृणवद्वचांसि मे विश्वे देवास उत सूरयो मम ॥११॥

जलले भरिपूर्ण समुद्र, विशाल नदी, अन्तरिक्ष, रजयुक्त पृथ्वी, अजएकपात्, सागर, गर्जनशील मेघ, अहिर्बुध्न्य र प्रज्ञावान् सबै देवताले हाम्रो स्तोत्र सुनून् ।

स्याम वो मनवो देववीतये प्राञ्चं नो यज्ञं प्र णयत साधुया ।
आदित्या रुद्रा वसवः सुदानव इमा ब्रह्म शस्यमानानि जिन्वत ॥१२॥

हे देवता हो ! हामी मनुका सन्तान मानिस तिमीहरूका लागि यज्ञीय सत्कर्म समर्पित गर्दछौं । उहिलेदेखि चलेको हाम्रा यज्ञको परम्परा राम्ररी सम्पादित गर । हे आदित्य, रुद्र र श्रेष्ठ दानी वसु हो । यी उच्चारित स्तोत्रले तिमीहरू खुसी होओ ।

दैव्या होतारा प्रथमा पुरोहित ऋतस्य पन्थामन्वेमि साधुया ।
क्षेत्रस्य पतिं प्रतिवेशमीमहे विश्वान्देवाँ अमृताँ अप्रयुच्छतः ॥१३॥

अग्नि र आदित्य दुवै सर्वश्रेष्ठ पुरोहितका रूप हुन् । यिनैले देवता आह्वान गर्दछन् । उनीहरूका लागि हामी हविष्यान्न समर्पित गर्दछौं । यज्ञको श्रेष्ठ र कल्याणकारी पथ हामी अनुसरण गर्दछौं । हामी नजिकै रहेका क्षेत्रपति र अविनाशी एवं प्रमादरहित सम्पूर्ण देवतासित धनको कामना गर्दछौं ।

वसिष्ठासः पितृवद्वाचमक्रत देवाँ ईडाना ऋषिवत् स्वस्तये ।
प्रीता इव ज्ञातयः काममेत्यास्मे देवासोऽव धूनुता वसु ॥१४॥

वसिष्ठ ऋषिका वंशजले ऋषि वसिष्ठको जस्तै मङ्गलमयी कामनाले देवताको पूजा र वन्दना गरे । हे देवता हो । आफ्नो प्रिय मित्रझैं तिमीहरू यहाँ आएर सन्तुष्ट हुँदै हाम्रो आकाङ्क्षा बुझेर हामीलाई गाईं आदि धन प्रदान गर ।

देवान्वसिष्ठो अमृतान्ववन्दे ये विश्वा भुवनाभि प्रतस्थुः ।
ते नो रासन्तामुरुगायमद्य यूयं पात स्वस्तिभिः सदा नः ॥१५॥

वसिष्ठ कुलमा उत्पन्न ऋषिले अमर देवताको अर्चना गरे । सबै लोकमा आफ्ना तेजले विद्यमान सबै देवताले हामीलाई श्रेष्ठ यशस्वी अन्न दिऊन् । हे देवता हो । तिमीहरू कल्याणकारी भएर सधैं हाम्रो संरक्षण गर ।

[सूक्त - ६७]

**ऋषि** - अयास्य आङ्गिरस । **देवता** - बृहस्पति । **छन्द** - त्रिष्टुप् ।

इमां धियं सप्तशीर्ष्णीं पिता न ऋतप्रजातां बृहतीमविन्दत् ।
तुरीयं स्विज्जनयद्विश्वजन्योऽयास्य उक्थमिन्द्राय शंसन् ॥१॥

हाम्रा पुर्खा अङ्गिरा ऋषिले सात छन्दको विशाल स्तोत्र रचना गरे । उनको उत्पत्ति सत्यले भएको थियो । संसारको कल्याणका लागि अयास्य ऋषिले इन्द्रदेवलाई प्रशंसा गरेर एक पद्य स्तोत्र रचना गरे ।

ऋतं शंसन्त ऋजु दीध्याना दिवस्पुत्रासो असुरस्य वीराः ।
विप्रं पदमङ्गिरसो दधाना यज्ञस्य धाम प्रथमं मनन्त ॥२॥

अङ्गिरा ऋषिले यज्ञका श्रेष्ठ स्थलमा जाने निश्चय गरे । सत्यव्रती, सरल मनोभावका, दिव्य पुत्र, महाबलवान् र ज्ञानीजस्तो आचरणनिष्ठ छन् ।

हंसैरिव सखिभिर्वावदद्भिरश्मन्मयानि नहना व्यस्यन्।
बृहस्पतिरभिकनिक्रदद्गा उत प्रास्तौदुच्च विद्वाँ अगायत् ॥३॥

बृहस्पतिदेवका मित्रले हंसको जस्तै स्वर निकाले। उनकै सहयोगमा बृहस्पतिदेवले ढुङ्गाका ढोका खोलेपछि भित्र थुनिएका गाई कराउन थाले। ती ज्ञानीले देवताका प्रति श्रेष्ठ स्तोत्र उच्च स्वरमा गाउन थाले।

अवो द्वाभ्यां पर एकया गा गुहा तिष्ठन्तीरनृतस्य सेतौ।
बृहस्पतिस्तमसि ज्योतिरिच्छन्नुदुस्रा आकर्वि हि तिस्र आवः ॥४॥

असत् रूपी थाहा अज्ञात ठाउँमा गाई लुकाइएका थिए। बृहस्पतिदेवले अन्धकारबाट प्रकाशको कामना गर्दै तलका दुई र माथिको एउटा गरी जम्मा तीन किसिमका ढोका खोलेर गाई प्रकट गरे।

विभिद्या पुरं शयथेमपाचीं निस्त्रीणि साकमुदधेरकृन्तत्।
बृहस्पतिरुषसं सूर्यं गामर्कं विवेद स्तनयन्निव द्यौः ॥५॥

बृहस्पतिदेवले उँधो फर्किएका पुर भेदन गरेर एकै साथ तीनै वटा बन्धन काटेर गाई थुनेर राखेका बललाई परास्त गरेपछि जलाशयबाट उषा, सूर्य र गाई एकै पटक प्रकट गराए। उनी विद्युत्को जस्तै गर्जना गर्ने र प्राणरूपी अर्क चिन्दछन्।

इन्द्रो वलं रक्षितारं दुघानां करेणेव वि चकर्ता रवेण।
स्वेदाञ्जिभिराशिरमिच्छमानोऽरोदयत्पणिमा गा अमुष्णात् ॥६॥

बल नामका राक्षसले गाई लुकाएको थियो। त्यसलाई इन्द्रदेवले हिंस्रक हतियारजस्ता आफ्ना हप्कीले छिन्नभिन्न गराए। मरुत्हरूको सहायता प्राप्त गर्न इच्छुक पणिलाई नष्ट गराए र त्यस असुरले चोरेर लगेका गाई मुक्त गराए।

स ईं सत्येभिः सखिभिः शुचद्भिर्गोधायसं वि धनसैरदर्दः।
ब्रह्मणस्पतिर्वृषभिर्वराहैर्घर्मस्वेदेभिर्द्रविणं व्यानट् ॥७॥

बृहस्पतिदेवले सत्यस्वरूप, मित्ररूप, तेजस्वी र ऐश्वर्ययुक्त मरुत्हरूका सहयोगले गाई थुनिराख्ने बल नामको राक्षस विनाश गरे। वेदज्ञानका स्वामी यिनले वर्षणशील मेघद्वारा प्रज्वलित र गतिशील मरुत्हरूका सहयोगले द्रव्य उपलब्ध गरे।

ते सत्येन मनसा गोपतिं गा इयानास इषणयन्त धीभिः।
बृहस्पतिर्मिथो अवद्यपेभिरुदुस्रिया असृजत स्वयुग्भिः ॥८॥

गाई उपलब्ध गरेर सत्यनिष्ठ मन र आफ्ना असल कर्मले बृहस्पतिदेव गाईको अधिपति बन्न प्रेरित भए। बृहस्पतिदेवले दुष्ट राक्षसबाट गाईको संरक्षण गर्नका लागि एकत्रित भएका मरुत्हरूका सहयोगले गाई विमुक्त गराए।

तं वर्धयन्तो मतिभिः शिवाभिः सिंहमिव नानदतं सधस्थे।
बृहस्पतिं वृषणं शूरसातौ भरेभरे अनु मदेम जिष्णुम् ॥९॥

अन्तरिक्षमा सिंहजस्तै बारम्बार गर्जना गर्ने, कामनावर्षक र विजयशील बृहस्पतिलाई प्रोत्साहित गर्ने हामी वीर मरुत्हरूलाई युद्धमा कल्याणकारी स्तुतिले प्रार्थना गर्दछौँ।

यदा वाजमसनद्विश्वरूपमा द्यामरुक्षदुत्तराणि सद्म।
बृहस्पतिं वृषणं वर्धयन्तो नाना सन्तो बिभ्रतो ज्योतिरासा ॥१०॥

बृहस्पतिदेव सर्व सांसारिक अन्नको सेवन गर्दै आकाशमाथि गएर उत्तम लोकमा प्रतिष्ठित हुँदा बलशाली बृहस्पतिदेवलाई देवताका वाणीले प्रोत्साहित गर्दछन्। उनीहरू विभिन्न दिशामा रहँदै तिनलाई उन्नतिदशील बनाउँछन्।

सत्यामाशिषं कृणुता वयोधै कीरिं चिद्ध्यवथ स्वेभिरेवैः।
पश्चा मृधो अप भवन्तु विश्वास्तद्रोदसी शृणुतं विश्वमिन्वे ॥११॥

हे देवता हो ! अन्न प्राप्तिका लागि गरिएको हाम्रो प्रार्थना सफल गर। तिमी आफ्ना आश्रयले साधकलाई संरक्षण गर र हाम्रा सबै आपद् निवारण गर। हे सम्पूर्ण विश्वलाई नै हर्षित गराउने द्यावापृथिवी ! तिमीहरू दुवैले हाम्रा निवेदनको अभिप्राय बुझ।

इन्द्रो मह्ना महतो अर्णवस्य वि मूर्धानमभिनदर्बुदस्य।
अहन्नहिमरिणात्सप्त सिन्धून्देवैर्द्यावापृथिवी प्रावतं नः ॥१२॥

सर्वसमर्थ बृहस्पतिदेवले विशाल जलभण्डारका रूपमा रहेका मेघको शिर छिन्नभिन्न गराए। जलका अवरोधक शत्रु विनाश गरे। सात धारा प्रवाहित गराउँदै मिसाए। हे द्यावापृथिवी ! तिमीहरू देवतासँगै आएर हाम्रो संरक्षण गर।

[सूक्त - ६८]

**ऋषि** - अयास्य आङ्गिरस। **देवता** - बृहस्पति। **छन्द** - त्रिष्टुप्।

**उदप्रुतो न वयो रक्षमाणा वावदतो अभ्रियस्येव घोषाः।**
**गिरिभ्रजो नोर्मयो मदन्तो बृहस्पतिमभ्यर्का अनावन् ॥१॥**

खेतको बालीबाट चरा उडाउँदा किसान कराएझैं, मेघको गर्जन बारम्बार सुनिएझैं, पर्वतबाट झर्ना खस्दा धाराले ध्वनि गरेझैं, मेघ गर्जिएझैं, ऋत्विकहरू बृहस्पतिलाई निरन्तर स्तुति गर्दछन्।

**सं गोभिराङ्गिरसो नक्षमाणो भग इवेदर्यमणं निनाय।**
**जने मित्रो न दम्पती अनक्ति बृहस्पते वाजयाशूँरिवाजौ ॥२॥**

अङ्गिराका पुत्र बृहस्पतिदेवले गुप्त स्थानमा रहेका गाई प्रकाशित गरे। भगदेवको जस्तै आफ्ना तेजले उनी व्याप्त भए। दम्पतीको पारस्परिक मिलनमा मित्रहरू सहायक भएझैं गनीहरूले जनसाधारणका लागि गाई उपलब्ध गराए। हे बृहस्पतिदेव ! तेज गतिमा अश्व दौडाएझैं गाईलाई गतिशील बनाऊ।

**साध्वर्या अतिथिनीरिषिराः स्पार्हाः सुवर्णा अनवद्यरूपाः।**
**बृहस्पतिः पर्वतेभ्यो वितूर्या निर्गा ऊपे यवमिव स्थिविभ्यः ॥३॥**

किसानले जम्मा पारेको जौ ढुकुटीबाट छर्नका लागि निकालेझैं बृहस्पतिदेवले कल्याणकारी दुध दिने, निरन्तर गतिशील, खोजेको पोषणले भरिपूर्ण, राम्रो रूपरङ्गका, निन्दारहित सुन्दर गाई पर्वतबाट शीघ्रतापूर्वक निकाले।

**आप्रुषायन्मधुन ऋतस्य योनिमवक्षिपन्नर्क उल्कामिव द्योः।**
**बृहस्पतिरुद्धरन्नश्मनो गा भूम्या उद्नेव वि त्वचं बिभेद ॥४॥**

आकाशमा उल्का प्रकट भएझैं, पूज्य बृहस्पतिदेव सत्यको उद्घाटन हुने ठाउँमा मधुर रस वर्साउँछन्। उनले मेघबाट गाई मुक्त गराएर वर्षाबाट पानीका थोपा चुहिएझैं पृथ्वीका बाहिरी भागलाई भेदन गरे।

**अप ज्योतिष तमो अन्तरिक्षादुद्नः शीपालमिव वात आजत्।**
**बृहस्पतिरनुमृश्या वलस्याभ्रमिव वात आ चक्र आ गाः ॥५॥**

वायुले जलका पृष्ठ भागमा रहेको भ्याउ हटाएझैं, वायुदेवले मेघ उडाएझैं, बृहस्पतिले विचारपूर्वक वल नामका असुरको आवरण हटाएर गाई बाहिर निकाले।

**यदा वलस्य पीयतो जसुं भेद् बृहस्पतिरग्नितपोभिरर्कैः।**
**दद्भिर्न जिह्वा परिविष्टमाददाविर्निधीँरकृणोदुस्रियाणाम् ॥६॥**

बृहस्पतिदेवको आगोजस्तै तातिएको र उज्यालो आयुधले वलका शस्त्रास्त्र छिन्नभिन्न गराएर बृहस्पतिदेवले ती गाई आफ्ना अधिकारक्षेत्रमा लिए। दाँतले चपाएको अन्न जिब्राले भेटेझैं पणिहरूको वध गरेर बृहस्पतिदेवले गाई प्राप्त गरे।

**बृहस्पतिरमत हि त्यदासां नाम स्वरीणां सदने गुहा यत्।**
**आण्डेव भित्त्वा शकुनस्य गर्भमुदुस्रियाः पर्वतस्य त्मनाजत् ॥७॥**

गुफामा लुकाएर राखिएका गाई कराएको सुनेर बृहस्पतिदेवलाई गाई त्यहाँ भएको आभास भयो। अन्डा फुटेर भित्रबाट पक्षीको बच्चा बाहिर निस्केझैं बृहस्पतिदेवले पर्वत र मेघको आवरण फुट्याएर गाई बाहिर निकालेर ल्याए।

**अश्नापिनद्धं मधु पर्यपश्यन्मत्स्यं न दीन उदनि क्षियन्तम्।**
**निष्टज्जभार चमसं न वृक्षाद् बृहस्पतिर्विरवेणा विकृत्य ॥८॥**

थोरै पानीमा माछाहरू छटपटाएझैं दयनीय अवस्थामा बृहस्पतिदेवले पर्वतका गुफामा बाँधिएका सुन्दर गाई देखे। वृक्षबाट सोमपात्र निर्माणका लागि काठ निकालेझैं बृहस्पतिदेवले विभिन्न प्रकारका बन्धन तोडेर गाई मुक्त गराए।

सोषामविन्दत्स स्व१: सो अग्नि सो अर्केण वि बबाधे तमांसि।
बृहस्पतिर्गोवपुषे वलस्य निर्मज्जानं न पर्वणो जभार॥९॥

बृहस्पतिदेवले गाईको मुक्तिका लागि उषा प्रकट गरे। उनले सूर्य र अग्निका माध्यमले अन्धकार विनाश गरे। हड्डी पार गरेर मज्जा प्राप्त भएझैं बल असुरलाई भेदन गरेर गाई बाहिर निकाले।

हिमेव पर्णा मुषिता वनानि बृहस्पतिनाकृपयद्वलो गाः।
अनानुकृत्यमपुनश्चकार यात्सुर्यामासा मिथ उच्चरातः॥१०॥

हिउँले पद्मपत्रको शोभा हरण गरेर विनाश गरेझैं गाईको हरण गरिएको थियो। बृहस्पतिदेवले वल नामका असुरबाट तिनलाई मुक्त गराए। यस्तो कार्य अरू कसैले गर्न सम्भव छैन। सूर्य र चन्द्र दुवैले यसको प्रमाण प्रस्तुत गर्दछन्।

अभि श्यावं न कृशनेभिरश्वं नक्षत्रेभिः पितरो द्यामपिंशन्।
रात्र्यां तमो अदधुर्ज्योतिरहन्बृहस्पतिर्भिनदद्रिं विददगाः॥११॥

सुनका गहनाले कालो वर्णका घोडा सजाएझैं देवताले नक्षत्रद्वारा द्युलोक सजाए। उनीहरूले रातका लागि अन्धकार र दिनका लागि प्रकाश स्थापित गराए। उसै बेला बृहस्पतिदेवले पर्वत भत्काएर गाई प्राप्त गरे।

इदमकर्म नमो अभ्रियाय यः पूर्वीरन्वानोनवीति।
बृहस्पतिः स हि गोभिः सो अश्वैः स वीरेभिः स नृभिर्नो वयो धात्॥१२॥

आकाशमा उत्पन्न बृहस्पतिदेवका निम्ति स्तुतिगान गाउँदै हामी आदरसहित प्रणाम गर्दछौं। नाना प्रकारका चिरपुरातन ऋचा उच्चारण बारम्बार गरिने बृहस्पतिदेवले हामीलाई गाई, घोडा, वीर सन्तान र सेवकसहितको अन्न आदि प्रदान गरुन्।

[सूक्त - ६९]

ऋषि - सुमित्र वाध्र्यश्व। देवता - अग्नि। छन्द - त्रिष्टुप् जगती।

भद्रा अग्नेर्वध्र्यश्वस्य संदृशो वामी प्रणीतिः सुरणा उपेतयः।
यदीं सुमित्रा विशो अग्र इन्धते घृतेनाहुतो जरते दविद्युतत्॥१॥

प्रशंसा गर्न योग्य अग्निदेवको दर्शन वध्र्यश्वका लागि कल्याणकारी होस्। उनी प्रकट भएको कल्याणकारी होस् र यज्ञतर्फको आगमन सुखदायक होस्। सुमित्र अग्निलाई कुण्डमा स्थापना गर्दा अग्निदेव घिउका आहुतिले प्रज्वलित हुन्छन् र हामी उनको अर्चना गर्दछौं।

घृतमग्नेर्वध्र्यश्वस्य वर्धनं घृतमन्नं घृतम्वस्य मेदनम्।
घृतेनाहुत उर्विया वि पप्रथे सूर्य इव रोचते सर्पिरासुतिः॥२॥

वाध्र्यश्वका वंशज अग्निदेव घिउका आहुतिले संवर्द्धित हुन्छन्। घिउ नै अग्निदेवको आहारको रूप हो र त्यही नै उनको पोषक हो। घिउको आहुति पाएर अग्निदेव तेजस्वी रूपमा अति प्रज्वलित हुन्छन् र घिउका आहुतिले सूर्यजस्तै प्रकाशमान हुन्छन्।

यत्ते मनुर्यनीकं सुमित्रः समीधे अग्ने तदिदं नवीयः।
स रेवच्छोच स गिरो जुषस्व स वाजं दर्षि स इह श्रवो धाः॥३॥

हे अग्निदेव! तिम्रो ज्वालारूपी किरण मनुले प्रदीप्त गरेझैं सुमित्र पनि प्रदीप्त गराउँछन्। यो तेजस्विता नवीन छ। तिमी धनले सम्पन्न भएर सुशोभित होऊ। हाम्रो प्रार्थना प्रेमपूर्वक ग्रहण गर। तिमी शत्रुको सेना विध्वंस गर र हामीलाई अन्नले युक्त यशस्विता प्रदान गर।

यं त्वा पूर्वमीडितो वध्र्यश्वः समीधे अग्ने स इदं जुषस्व।
स नः स्तिपा उत भवा तनूपा दात्रं रक्षस्व यदिदं ते अस्मे॥४॥

हे अग्निदेव! वध्र्यश्व नामका ऋत्विकले तिमीलाई नै सर्वप्रथम हविले प्रज्वलित गरे। तिमी हाम्रो स्तोत्र पनि ग्रहण गर। तिमी हाम्रो निवासगृह र देहको संरक्षक बन र हाम्रा सन्तानलाई सुरक्षित गराऊ। तिमीले उदार हृदयले हामीलाई जे प्रदान गरेका छौ, त्यसको संरक्षण पनि गर।

भवा द्युम्नी वाध्र्यश्वोत गोपा मा त्वा तारीदभिमातिर्जनानाम्।
शूर इव धृष्णुश्च्यवनः सुमित्रः प्र नु वोचं वाध्र्यश्वस्य नाम॥५॥

हे वध्र्यश्वका वंशज अग्निदेव! तिमी यशस्वी बनेर हाम्रो संरक्षक भइदेऊ। हिंसक शक्तिले तिमीलाई पराजित गर्न नसकून्। किनभने तिमी स्वयं शत्रु पराजित गर्ने हौ। वीरझैं धैर्यशाली,

बलिष्ठ तिमी शत्रु पराजित गर्ने र शत्रुसंहारक हौ। हामी वाध्र्यश्व अग्निका नामको बयान सुमित्रबाट गराउँछौं।

समज्र्या पर्वत्याऽवसूनि दासा वृत्राण्यार्या जिगेथ।
शूर इव धृष्णुश्च्यवनो जनानां त्वमग्ने पृतनायूँरभि ष्याः ॥६॥

हे अग्निदेव ! तिमी दास असुरको सम्पदा जितेर श्रेष्ठ आर्यलाई प्रदान गर्दछौ। तिमी शूरवीर योद्धाझैं धैर्यवान् छौ र शत्रु पराजित गर्दछौ। युद्धका इच्छाले आइलाग्ने शत्रु पराजित गर।

दीर्घतन्तुर्बृहदुक्षायमग्निः सहस्रस्तरीः शतनीथ ऋभ्वा।
द्युमान् द्युमत्सु नृभिर्मृज्यमानः सुमित्रेषु दीदयो देवयत्सु ॥७॥

विस्तृत तन्तुले युक्त, प्रमुख दानी सहस्र स्थान ढाकिदिने, अनेकौं मार्गमा हिँड्ने, महिमाले सम्पन्न, तेजस्विताले युक्त अग्निदेव विशिष्ट ऋत्विक्‌द्वारा सुशोभित हुन्छन्। हे अग्निदेव ! तिमी देवसाधक सुमित्र वंशीको घर उज्यालो बनाऊ।

त्वे धेनुः सुदुघा जातवेदोऽसश्चतेव समना सबर्धुक्।
त्वं नृभिर्दक्षिणावद्भिरग्ने सुमित्रेभिरिध्यसे देवयद्भिः ॥८॥

हे सर्वज्ञ अग्निदेव ! तिमीसित अति सजिलै दुध दिने गतिलो गाई छ। त्यसलाई दुहुन कुनै कठिन छैन। आदित्यका सहयोगले त्यसले अमृतजस्तै दुध दिन्छ। देवसाधक सुमित्रका वंशज प्रमुख ऋत्विक्‌हरू दक्षिणायुक्त भएर तिमीलाई प्रदीप्त गराउँछन्।

देवाश्चित्ते अमृता जातवेदो महिमानं वाध्र्यश्व प्र वोचन्।
यत्सम्पृच्छं मानुषीर्विश आयन्त्वं नृभिरजयस्त्वावृधेभिः ॥९॥

हे सर्वज्ञ वाध्र्यश्व अग्निदेव ! तिम्रा महिमाको गान अमर देवताले गर्दछन्। मनस्वी प्रजाले देवताका सहयोगले असुरता संहार गर्ने सम्बन्धमा तिम्रा सामु गएर प्रश्न गर्दा तिमीले नायक बनेर आफूलाई वृद्धि गराउने देवतासँग विघ्नकारी शत्रु पराजित गर्‍यौ।

पितेव पुत्रमबिभरुपस्थे त्वामग्ने वध्र्यश्वः सपर्यन्।
जुषाणो अस्य समिधं यविष्ठोत पूर्वां अवनोर्व्राधतश्चित् ॥१०॥

हे अग्निदेव ! पिताले पुत्रको पालनपोषण गरेझैं मेरा पिता वध्र्यश्वले नजिकै राखेर हविष्यान्न समर्पित गर्दै तिम्रो अर्चना गरे। हे तरुण रूपका अग्निदेव ! हाम्रा पिता वध्र्यश्वबाट समिधा पाएर तिमीले विघ्नकारी शत्रु विनाश गर्‍यौ।

शश्वदग्निर्वध्र्यश्वस्य शत्रून्नृभिर्जिगाय सुतसोमवद्भिः।
समनं चिददहश्चित्रभानोऽव व्राधन्तमभिनद्वृधश्चित् ॥११॥

अग्निदेव, सोम पेल्ने काममा लागेका ऋत्विक्‌हरूको सहयोगले वध्र्यश्वका शत्रुमाथि सधैं विजय प्राप्त गरिरहेका छन्। हे अद्भुत तेजस्वी अग्निदेव ! तिमी सावधानीका साथ हिंस्रक शत्रु दहन गर्दछौ। तिमी स्वयं तेजस्वी ज्वालाले युक्त भएर अनिष्टकारी शत्रु नष्ट गरिदिन्छौ।

अयमग्निर्वध्र्यश्वस्य वृत्रहा सनकात्प्रेद्धो नमसोपवाक्यः।
स नो अजामींरुत वा विजामीनभि तिष्ठ शर्धतो वाध्र्यश्व ॥१२॥

वध्र्यश्व अग्निदेव शत्रुनाशक र प्राचीन कालदेखि नै अति तेजस्वी तथा प्रदीप्त रूपमा छन्। यिनी नमनयोग्य वचनले स्तुत्य छन्। हे वध्र्यश्व कुलमा उत्पन्न अग्निदेव ! तिमी हाम्रा विद्रोही शत्रु र विजातीय हिंस्रकलाई पराजित गर।

[सूक्त - ७०]

ऋषि - सुमित्र वाध्र्यश्व। देवता - आप्रीसूक्त। छन्द - त्रिष्टुप्।

इमां मे अग्ने समिधं जुषस्वेळस्पदे प्रति हर्या घृताचीम्।
वर्ष्मन्पृथिव्याः सुदिनत्वे अह्नामूर्ध्वो भव सुक्रतो देवयज्या ॥१॥

हे अग्निदेव ! उत्तर वेदीमा प्रदान गरिएको हाम्रो यो समिधा ग्रहण गर र घिउले सेचन गर्ने आकाङ्क्षा गर। हे श्रेष्ठ ज्ञानी अग्निदेव ! पृथ्वीका माथिल्ला भागमा हाम्रो दिन श्रेष्ठ, सुखकर र आनन्दमय बनाउन देवयज्ञद्वारा ज्वालासँगै ऊर्ध्वगामी होऊ।

आ देवानामग्रयावेह यातु नराशंसो विश्वरूपेभिरश्वैः।
ऋतस्य पथा नमसा मियेधो देवेभ्यो देवतमः सुषूदत् ॥२॥

देवताका अगुवा र मानिसद्वारा स्तुत्य अग्निदेव विभिन्न वर्णले युक्त अश्वसँगै यस यज्ञमा पदार्पण गरुन्। अति पूजनीय, देवताका प्रमुख अग्निदेव यज्ञीय मार्गमा सम्मानित भएर स्तुतिका सहयोगले देवताका निम्ति आहुति ग्रहण गरुन्।

शश्वत्तममीळते दूत्याय हविष्मन्तो मनुष्यासो अग्निम्।
वहिष्ठैरश्वैः सुवृता रथेना देवान्वक्षि नि षदेह होता ॥३॥

हविदाता यजमान हविष्यात्र वहन गर्नका लागि हे अग्निदेव ! उत्तम अश्व र रथमा इन्द्र आदि देवतालाई यज्ञमा लिएर आऊ। होता बनेर यस यज्ञमा प्रतिष्ठित होऊ भन्दै शाश्वत अग्निदेवको प्रार्थना गर्दछन्।

वि प्रथतां देवजुष्टं तिरश्चा दीर्घं द्राघ्मा सुरभि भूत्वस्मे।
अहेडता मनसा देव बर्हिरिन्द्रज्येष्ठाँ उशतो यक्षि देवान् ॥४॥

हे बर्हि नामका अग्निदेव ! देवताद्वारा सेवन गरिने बर्हि नामका यज्ञको विस्तार होस्। यसको समय र अवधि बढोस् र हाम्रा लागि सुगन्ध उत्पन्न होस्। हे देवतास्वरूप अग्निदेव ! तिमी क्रोधको भावनाले रहित भएर प्रसन्न होऊ। आहुतिका अभिलाषी इन्द्र आदि देवताको अर्चना गर।

दिवो वा सानु स्पृशता वरीयः पृथिव्या वा मात्रया वि श्रयध्वम्।
उशतीर्द्वारो महिना महद्भिर्देवं रथं रथयुर्धारयध्वम् ॥५॥

हे दिव्य द्वार ! तिमी दिव्यलोकका माथिल्लो भाग स्पर्श गर र उन्नतिशील होऊ। तिमी पृथ्वीजस्तै उत्पादनशक्तिले सम्पन्न भएर विस्तृत होऊ। देवताको आकाङ्क्षा गर्ने र रथको इच्छा गर्ने बनेर तिमी आफ्ना महिमाले देवताद्वारा अधिष्ठित होऊ र विहार गर्न योग्य साधनका रूपमा रथ धारण गर।

देवी दिवो दुहितरा सुशिल्पे उषासानक्ता सदतां नि योनौ।
आ वां देवास उशती उशन्त उरौ सीदन्तु सुभगे उपस्थे ॥६॥

दिव्यलोकको सुन्दरता र तेजस्वी पुत्री उषा तथा रात्रि यज्ञका वेदीमा प्रतिष्ठित छन्। हे अभिलाषिणी र श्रेष्ठ वैभवले युक्त देवी हो ! तिमीहरूको विस्तृत र निकटस्थ स्थानमा हविको अभिलाषाले प्रेरित भएर देवता विराजमान होऊन्।

ऊर्ध्वो ग्रावा बृहदग्निः समिद्धः प्रिया धामान्यदितेरुपस्थे।
पुरोहितावृत्विजा यज्ञे अस्मिन् विदुष्टरा द्रविणमा यजेथाम् ॥७॥

सोम कुट्नका लागि ढुङ्गो माथि उचालेर महिमायुक्त अग्निदेव अति प्रदीप्त गर्दै देवता खुसी बनाउने धामका रूपमा रहेका यज्ञस्थलमा अग्नि उपस्थित गराओ, अनि पुरोहित र ऋत्विक् दुवै हे ज्ञानी पुरुष हो ! यस सत्कर्मरूपी यज्ञलाई ऐश्वर्यसम्पन्न बनाओ।

तिस्रो देवीर्बर्हिरिदं वरीय आ सीदत चकृमा वः स्योनम्।
मनुष्वद्यज्ञं सुधिता हवींषीळा देवी घृतपदी जुषन्त ॥८॥

हे इडा आदि तीन देवीहरू हो ! तिमीहरूका निम्ति सुखद आसन विछाएका छौं। यी श्रेष्ठ कुशका आसनमा स्थान ग्रहण गर। इडा, तेजस्विनी सरस्वती र दिव्य स्वरूप भएकी भारतीले मनुले सम्पन्न गरेका यज्ञमा आहुति ग्रहण गरेझैं हाम्रा यज्ञमा उत्तम रीति र आदर भावले प्रदान गरिएको आहुति ग्रहण गरुन्।

देव त्वष्टर्यद्ध चारुत्वमानड्यदङ्गिरसामभवः सचाभूः।
स देवानां पाथ उप प्र विद्वानुशन्यक्षि द्रविणोदः सुरत्नः ॥९॥

हे त्वष्टादेव ! तिमीले मङ्गलमय स्वरूप धारण गरेका छौ। हामी अङ्गिराहरूका मित्र तिमी हौ। हे ऐश्वर्यदाता ! श्रेष्ठ सम्पदाका गुणवान् स्वामी तिमी हौ, हविष्यात्रका अभिलाषाले देवभाग चिन र देवताहरूलाई अन्न प्रदान गर।

वनस्पते रशनया नियूया देवानां पाथ उप वक्षि विद्वान्।
स्वदाति देवः कृणवद्धवींष्यवतां द्यावापृथिवी हवं मे ॥१०॥

हे ज्ञानवान् विद्वान् वनस्पतिदेव ! तिमी अग्निका जिब्राले संयुक्त भएर देवताका नजिकै हविष्यात्र

पुऱ्याउन सहयोग गर। अग्निदेव हव्यमा रहेको रस सेवन गरुन् र हामीले प्रदान गरेको आहुति देवताकहाँ पुऱ्याऊन्। द्युलोक र पृथ्वीमा यज्ञको सुरक्षा गरुन्।

**आग्ने वह वरुणमिष्टये न इन्द्रं दिवो मरुतो अन्तरिक्षात्।**
**सीदन्तु बर्हिर्विश्व आ यजत्राः स्वाहा देवा अमृता मादयन्ताम् ॥११॥**

हे अग्निदेव। तिमी द्युलोक र अन्तरिक्षलोकबाट इन्द्र, वरुण र मरुत् आदि देवतालाई हाम्रा यज्ञका निम्ति लिएर आऊ। यज्ञका अभिलाषी देवता आएर आआफ्ना आसनमा विराजमान होऊन्। अविनाशी देवता स्वाहा शब्दले दिएको आहुतिले खुसी होऊन्।

**[सूक्त - ७१]**

**ऋषि** - बृहस्पति आङ्गिरस। **देवता** - ज्ञान। **छन्द** - त्रिष्टुप् जगती।

**बृहस्पते प्रथमं वाचो अग्रं यत्प्रैरत नामधेयं दधानाः।**
**यदेषां श्रेष्ठं यदरिप्रमासीत्प्रेणा तदेषां निहितं गुहाविः ॥१॥**

बृहस्पति ऋषि प्रारम्भिक स्थितिमा पदार्थको नाम राखेर आफैंसित अभिव्यक्त गर्दछन्, त्यो ज्ञानको पहिलो खुडकिलो हो। यिनी शुद्ध र दोषरहित ज्ञान अनुभूतिका गुफामा लुकेको छ, त्यो त अन्तःकरणका प्रेरणाले नै प्रकट हुन्छ भन्दछन्।

**सक्तुमिव तितउना पुनन्तो यत्र धीरामनसा वाचमक्रत।**
**अत्रा सखायः सख्यानि जानते भद्रैषां लक्ष्मीर्निहिताधि वाचि ॥२॥**

नाङलाले खाद्यान्न सफा गरिएझैं मेधावीहरूले आफ्ना ज्ञानबुद्धिका सामर्थ्यले भाषा परिस्कृत गर्दछन्। त्यस बेला मित्र, आत्मीयजन मित्रताको भाव बुझ्दछन्। यस्ता स्थितिमा उनीहरूका वाणीमा मङ्गलकारी लक्ष्मीको निवास हुन्छ।

**यज्ञेन वाचः पदवीयमायन्तामन्वविन्दन्नृषिषु प्रविष्टाम्।**
**तामाभृत्या व्यदधुः पुरुत्रा तां सप्त रेभा अभि सं नवन्ते ॥३॥**

ज्ञानी पुरुष श्रेष्ठ वाणीको अभिप्राय यज्ञीय प्रवृत्तिका माध्यमले प्राप्त गर्दछन्। उनीहरूले तत्त्वज्ञानी ऋषिका अन्तःकरणमा प्रवेश गरेको वाणी उपलब्ध गरे। त्यसपछि भाषा उपलब्ध गरेर उनीहरूले त्यसको प्रचार गरे। यसै किसिमले त्यस भाषारूपी वाणीलाई उनीहरूले सात छन्दका स्तुतिका रूपमा प्रस्तुत गरे।

**उत त्वः पश्यन्न ददर्श वाचमुत त्वः शृण्वन्न शृणोत्येनाम्।**
**उतो त्वस्मै तन्वं१ वि सस्रे जायेव पत्य उशती सुवासाः ॥४॥**

कसैले देखे पनि त्यसको दर्शन गर्न सक्दैनन्। कुनै सुनेर पनि बुझ्न सक्दैनन्, तर पतिका अगाडि पत्नीले आफ्नो रूप नलुकाएझैं वाणीरूपी देवीले असल पात्रका अगाडि आफ्नो रूप खोलिदिन्छिन्।

**उत त्वं सख्ये स्थिरपीतमाहुर्नैनं हिन्वन्त्यपि वाजिनेषु।**
**अधेन्वा चरति माययैष वाचं शुश्रुवाँ अफलामपुष्पाम् ॥५॥**

विद्वान्हरूमध्ये ज्ञानीको यस्तो प्रतिष्ठा छ कि ऊ श्रेष्ठ शाब्दिक भाव ग्रहण गर्न सक्षम छ। वाणी प्रकट गर्नमा उसको जति शक्ति अरू कसैको पनि छैन। तिनीहरूमै कुनै त भाषाको फल र फूलले रहित भएर सूत्र र अध्ययन गर्नमा मात्रै सीमित छ भन्ने मान्छन्। तिनीहरू दुधविनाका बाँझा गाईजस्ता वाणीले देखावटी गरिहिँड्दछन्।

**यस्तित्याज सचिविदं सखायं न तस्य वाच्यपि भागो अस्ति।**
**यदीं शृणोत्यलकं शृणोति नहि प्रवेद सुकृतस्य पन्थाम् ॥६॥**

दिव्यज्ञानको धाराजस्तो मित्रभाव त्याग्ने व्यक्तिलाई दिव्य वाणीमा कुनै उल्लेखनीय भाग प्राप्त हुँदैन। त्यस्ताले सुनेको त्यो सबै त्यसका लागि निरर्थक हुन्छ र उसलाई सत्कर्मको मार्ग पनि प्राप्त हुँदैन।

**अक्षण्वन्तः कर्णवन्तः सखायो मनोजवेष्वसमा बभूवुः।**
**आदघ्नास उपकक्षास उ त्वे ह्रदा इव स्नात्वा उ त्वे ददृश्रे ॥७॥**

दर्शनशक्तिले सम्पन्न, श्रवणशक्तिले युक्त, उस्तै किसिमका ज्ञानले युक्त मित्र पनि मनका अनुभवले प्राप्त ज्ञानमा समानता हुँदैन। कुनै जलाशय मुखसम्म आउने, कुनै कम्मरसम्म पानी आउने गरी गहिरो र कुनै स्नान गर्नका लागि उपयुक्त भएझैं हो।

हृदा तष्टेषु मनसो जवेषु यद् ब्राह्मणाः संयजन्ते सखायः ।
अत्राह त्वं वि जहुर्वेद्याभिरोहब्रह्माणो वि चरन्त्यु त्वे ॥८॥

समान योग्यतायुक्त वेदज्ञ विद्वान्हरू हृदयले जान्ने योग्य निरुपणका लागि एकत्रित हुँदा ज्ञानमा अल्पज्ञजति छोडिन्छन् भने स्तोत्रविद् मर्मज्ञहरू विद्वान् बनेर विचरण गर्दछन् ।

इमे ये नार्वाङ्न परश्चरन्ति न ब्राह्मणसो न सुतेकरासः ।
त एते वाचमभिपद्य पापया सिरीस्तन्त्र तन्वते अप्रजज्ञयः ॥९॥

विद्वत्तारहित, अज्ञानी मानिस यस लोकमा वेदज्ञ विद्वान् र परलोकमा देवताहरूका साथ यज्ञ आदि सत्कर्मले रहित, न त ऋत्विक् नै हुन्, न सोम यज्ञ नै गर्दछन्, त्यस्ता व्यक्ति ज्ञाननिष्ठ हुन सक्दैनन् । ती पापबुद्धि वाणीले प्रपञ्च गर्छन् र हलो जोत्ने आदिका स्थूल काममा श्रम गर्नेतिर लागेका हुन्छन् ।

सर्वे नन्दन्ति यशसागतेन सभासाहेन सख्या सखायः ।
किल्विषस्पृत्पितुषणिर्ह्येषामरं हितो भवति वाजिनाय ॥१०॥

एकै विचारका मित्र, सभामा प्रमुखता प्रदान गर्ने यशस्वी सोमले आनन्दित हुन्छन् । अन्न प्रदान गर्ने र पापकर्म बीचैमा समाप्त गराउने सोमदेव मानिसलाई शक्ति प्रदान गर्नका लागि सक्षम छन् ।

ऋचां त्वः पोषमास्ते पुपुष्वान्गायत्रं त्वो गायति शक्वरीषु ।
ब्रह्मा त्वो वदति जातविद्यां यज्ञस्य मात्रां वि मिमीत उ त्वः ॥११॥

एउटा स्तोता वेदमन्त्रका यज्ञीय अनुष्ठानमा विधिविधान प्रयोग गर्दै विराजमान हुन्छन् । अर्को शक्वरी ऋचामा गायत्री आदि छन्दको सामगान गर्दछन् । ब्रह्मा नामका तेस्रा विद्वान्ले प्रायश्चित आदि विधानको व्याख्या गर्दछन् र चौथा अध्वर्यु पुरोहितले यज्ञकर्मका विभिन्न कार्य विशेष रूपले निर्वाह गर्दछन् ।

[सूक्त – ७२]

**ऋषि** – लौक्य आङ्गिरस अदिति दाक्षायणी । **देवता** – देवगण । **छन्द** – अनुष्टुप् ।

देवानां नु वयं जाना प्र वोचाम विपन्यया ।
उक्थेषु शस्यमानेषु यः पश्यादुत्तरे युगे ॥१॥

हामी देवताहरूका उत्पत्तिको वर्णन उत्तम वाणीले गर्दछौं । स्तोत्र प्रकट भएपछि आगामी युगको दर्शन हुनेछ ।

ब्रह्मणस्पतिरेता सं कर्मार इवाधमत् । देवानां पूर्व्ये युगेऽसतः सदजायत ॥२॥

सृष्टिका प्रारम्भमा ब्रह्मणस्पतिले कर्मकारले भैं यिनलाई परिपक्व गराए । देवताभन्दा पहिले सृष्टिमा अव्यक्त ब्रह्मबाट व्यक्त नामरूपात्मक देवशक्तिको उत्पत्ति भयो ।

देवानां युगे प्रथमेऽसतः सदजायत । तदाशा अन्वजायन्त तदुत्तानपदस्परि ॥३

देवताको युगभन्दा पहिले असत्बाट सत् उत्पत्ति भयो । त्यसपछि आशाको विकास भयो । त्यसपछि माथि जाने अथवा पाइला सार्ने कणको जन्म भयो ।

भूर्जज्ञ उत्तानपदो भुव आशा अजायन्त ।
अदितेर्दक्षो अजायत दक्षाद्वदितिः परि ॥४॥

भूलोकबाट ऊर्ध्व गतिशीलको संरचना भयो र भुव नामको आशाशक्तिको विकास भयो । अदितिबाट दक्ष उत्पन्न भए । अनि दक्षबाट अदितिको जन्म भयो ।

अदितिर्ह्यजनिष्ट दक्ष या दुहिता तव ।
तां देवा अन्वजायन्त भद्रा अमृतबन्धवः ॥५॥

हे दक्ष ! तिम्री कन्या उत्पन्न भइन्, उसै प्रक्रियाले अमृतका बन्धनले बाँधिएका देवता वा अन्य नक्षत्र आदिको जन्म भयो ।

यद्देवा अदः सलिले सुसंरब्धा अतिष्ठत ।
अत्रा वो नृत्यतामिव तीव्रो रेणुरपायत ॥६॥

हे देवता हो ! तिमीहरू यस विस्तृत जलमा प्रतिष्ठित हुँदा त्यहाँ तिम्रा नर्तनले तीव्र रेणु प्रकट भए ।

यद्देव यतयो यथा भुवनान्यपिन्वत । अत्रा समु आ गूढहमा सूर्यमजभर्तन ॥७॥

देवताले गतिशील भएर भुवनलाई पुष्ट गराएपछि समुद्रका गर्भमा सूर्यलाई स्वाभाविक ढङ्गले धारण गरियो ।

**अष्टौ पुत्रासो अदितेर्ये जातास्तन्व१ स्परि।**
**देवाँ उप प्रैत्सप्तभिः परा मार्ताण्डमास्यत् ॥८॥**

अदितिका शरीरबाट आठ पुत्र उत्पन्न भए। सूर्यलाई आकाशमा स्थापित गरेर सात वटासँग अदिति देवताकहाँ गइन्।

**सप्तभिः पुत्रैरदितिरुप प्रैत्पूर्व्यं युगम्।**
**प्रजायै मृत्यवे त्वत्पुनर्मार्ताण्डमाभरत् ॥९॥**

प्रारम्भिक युगमा अदिति सात पुत्रसँग आउँछिन्। हे अदिति ! प्रजा सृष्टि र विनाश गर्ने क्रममा सूर्यले तिमीलाई नै परिपूर्ण गराउँछन्।

[सूक्त – ७३]

**ऋषि** – गौरिवीति शाक्त्य। **देवता** – इन्द्र। **छन्द** – त्रिष्टुप।

**जनिष्ठा उग्रः सहसे तुराय मन्द्र ओजिष्ठो बहुलाभिमानः।**
**अवर्धन्निन्द्रं मरुतश्चिदत्र माता यद्वीरं दधनद्धनिष्ठा ॥१॥**

धारण गर्ने माताले वीर इन्द्रलाई जन्म दिएपछि मरुतहरूले उनको प्रशंसा गर्दै तिमी वन्दनीय, ओजवान् र महास्वाभिमानी छौ, तिमी पराक्रमका लागि र शत्रु विनाशका लागि प्रचण्ड शक्तिले सम्पन्न भएर जन्मेका छौ भने।

**द्रुहो निषत्ता पृशनी चिदेवैः पुरू शंसेन वावृधुष्ट इन्द्रम्।**
**अभीवृतेव ता महापदेन ध्वान्तात्प्रपित्वादुदरन्त गर्भाः ॥२॥**

शत्रुविध्वंसक इन्द्रदेवका नजिक अनुशासित सैन्यदल छ। गतिशील मरुतहरूले इन्द्रदेवलाई अनेकौँ स्तोत्रले उत्साहित गरे। गोठमा भरिएका गाई ढोका उघ्रनासाथ बाहिर निस्केझैँ वृष्टिको जलरूपी गर्भ बादलभित्रका अन्धकारबाट बाहिर आयो।

**ऋष्वा ते पादा प्र यज्जिगास्यवर्धन्वाजा उत ये चिदत्र।**
**त्वमिन्द्र सालावृकान्त्सहस्रमासन् दधिषे अश्विना ववृत्याः ॥३॥**

हे इन्द्रदेव ! तिम्रा दुवै चरण महिमामय छन्। तिमी अगाडि जाँदा ऋभुहरू र तिमीसित भएका देवता उत्साहित हुन्छन्। हे इन्द्रदेव ! तिमी सहस्रौं वृक मुखमा धारण गर्दछौ र अश्विनीकुमारलाई पनि फुर्तिला बनाउँछौ।

**समना तूर्णिरुप यासि यज्ञमा नासत्या सख्याय वक्षि।**
**वसाव्यामिन्द्र धारयः सहस्राश्विना शूर ददतुर्मघानि ॥४॥**

हे इन्द्रदेव ! सङ्ग्राम क्षेत्रमा पुग्न हतार भएका बेला पनि तिमी यज्ञमा पुग्दछौ। त्यस्ता बेलामा तिमी अश्विनीकुमारसित मैत्री गर्दछौ। हाम्रा लागि असङ्ख्य सम्पदा धारण गर्दछौ। हे पराक्रमी वीर ! तिम्रा सेवक अश्विनीकुमारले धनसम्पदान प्रदान गरुन्।

**मन्दमान ऋतादधि प्रजायै सखिभिरिन्द्र इषिरेभिरर्थम्।**
**आभिर्हि माया उप दस्युमागान्मिहः प्र तम्रा अवपत्तमांसि ॥५॥**

इन्द्रदेव यज्ञमा आनन्दित भएर गतिशील मित्रजस्तै मरुत्गणसँग यजमानलाई ऐश्वर्य सम्पदा प्रदान गर्छन्। इन्द्रदेवले यजमानका लागि दुष्ट दस्युको छलपूर्ण माया नष्ट गरे। उनले जल वर्षा गरे र अन्धकार हटाए।

**सनामाना चिद् ध्वसयो न्यस्मा अवाहन्निन्द्र उषसो यथानः।**
**ऋष्वैरगच्छः सखिभिर्निकामैः साकं प्रतिष्ठा हृद्या जघन्थ ॥६॥**

इन्द्रदेव सबै शत्रु एकै किसिमले विनाश गर्दछन्। उनले उषाको शकट नामको शत्रु विनाश गरेझैँ वृत्रासुरलाई पनि वध गरे। हे इन्द्रदेव ! तिमी आफ्ना देदीप्यमान र पराक्रमी मरुत्हरूका सहयोगले वृत्रको संहार गर्दछौ। शत्रुको बलिष्ठ शरीर पनि तिमीले नाश गर्‍यौ।

**त्वं जघन्थ नमुचिं मखस्युं दासं कृण्वान ऋषये विमायम्।**
**त्वं चकर्थ मनवे स्योनान्पथो देवत्राञ्जसेव यानान् ॥७॥**

हे इन्द्रदेव ! तिमीले ऋषिका यज्ञमा बाधा उत्पन्न गर्ने अथवा तिम्रो धन लिन खोज्ने नमुची नामको असुर विनाश गर्‍यौ। ऋषिको कल्याणका लागि तिमीले विध्वंसक नमुचीको छलप्रपञ्च समाप्त गरायौ। तिमीले देवताका माझमा जनसाधारणका लागि सुखदायी र सहज गमनयोग्य पथ प्रशस्त गरायौ।

त्वमेतानि पप्रिषे वि नामेशान इन्द्र दधिषे गभस्तौ।
अनु त्वा देवाः शवसा मदन्त्युपरिबुध्नान्वनिनश्चकर्थ ॥८॥

हे सम्पूर्ण विश्वका अधिपति इन्द्रदेव ! तिमी यो संसार जल अथवा तेजले व्याप्त गर्दछौ र हातमा वज्र नामको अस्त्र लिन्छौ। तिमी शक्तिशाली हुनाले सबै देवताले अर्चना गर्दछन्। तिमीले नै जलवाट मनग्गे बादलका मुखहरू उँधोतिर फर्कायौ।

चक्रं यदस्याप्स्वा निषत्तमुतो तदस्मै मध्विच्चच्छद्यात्।
पृथिव्यामतिषितं यदूध पयो गोष्वदधा ओषधीषु ॥९॥

देदीप्यमान वज्रधारी इन्द्रदेवका वज्रले उपासकका लागि अन्तरिक्षका मधुर जललाई प्रेरित गर्दछ। पृथ्वीमा प्रवाहमान उही जल गाईको दुधका रूपमा र वनस्पतिमा पोषक रसका रूपमा विद्यमान छ।

अश्वादियायेति यद्वदन्त्योजसो जातमुत मन्य एनम्।
मन्योरियाय हर्म्येषु तस्थौ यतः प्रजज्ञ इन्द्रो अस्य वेद ॥१०॥

इन्द्रदेवको उत्पत्तिको कारण अश्वरूपी आदित्य हुन् भन्ने कतिपय विद्वान्को भनाइ छ, तर पनि हामी यिनलाई शक्ति अथवा क्रोधरूपी अग्निबाट उत्पन्न भएका हुन् भन्ने मान्दछौं। त्यसो भएकैले उनी सङ्घर्ष गर्नका लागि सधैं तत्पर रहन्छन्। इन्द्रदेव केबाट उत्पन्न भए भन्ने वास्तविक तथ्य त उनैले पनि जान्दैनन्।

वयः सुपर्णा उप सेदुरिन्द्रं प्रियमेधा ऋषयो नाधमानाः।
अप ध्वान्तमूर्णुहि पूर्धि चक्षुर्मुमुग्ध्य१स्मान्निधयेव बद्धान् ॥११॥

सञ्चरणशील सूर्यको किरण बलशाली इन्द्रदेवका नजिकै पुग्दछ। देवताले बन्धनमा परेकालाई मुक्ति दिऊन्, अन्धकार हटाइदिऊन् र हाम्रा आँखालाई दिव्य प्रकाशले युक्त बनाइदिऊन् भनेर प्रियमेध अथवा यज्ञप्रेमी ऋषि याचना गरिरहेका छन्।

[सूक्त - ७४]

ऋषि - गौरिवीति शाक्त्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

वसूनां वा चर्कृष इयक्षन्धिया वा यज्ञैर्वा रोदस्योः।
अर्वन्तो वा ये रयिमन्तः सातौ वनुं वा ये सुश्रुणं सुश्रुतो धुः ॥१॥

ऐश्वर्य प्रदानका निम्ति इन्द्रदेवलाई यज्ञले प्रेरित गरिन्छ। उनी द्युलोक निवासी देवता र पृथ्वीलोक निवासी मानिसद्वारा आकर्षित हुन्छन्। सङ्ग्राम क्षेत्रमा धन जित्नका लागि गतिशील हुनेहरू उनलाई आकृष्ट गर्दछन् र शत्रु संहार गर्नमा सुप्रसिद्ध हुनेहरू पनि इन्द्रदेवलाई आह्वान गर्दछन्।

हव एषामसुरो नक्षत द्यां श्रवस्यता मनसा निंसत क्षाम्।
चक्षाणा यत्र सुविताय देवा द्यौर्न वारेभिः कृणवन्त स्वैः ॥२॥

अङ्गिराका आह्वानको पुकारले आकाश गुञ्जायमान छ। इन्द्रदेव र अन्नका अभिलाषी देवताको इच्छाशक्तिले पृथ्वी प्राप्त गर्दछन्। पृथ्वीमा पणिले चोरेका गाई खोज्दै आफ्नो कल्याणका लागि देवताहरू अन्तरिक्षका सूर्यझैं आआफ्नो उत्तम तेज प्रकट गर्छन्।

इयमेषाममृतानां गीः सर्वताता ये कृपणन्त रत्नम्।
धियं च यज्ञं च साधन्तस्ते नो धान्तु वसव्य१मसामि ॥३॥

सबैको कल्याणका लागि यज्ञमा श्रेष्ठ ऐश्वर्य प्रदान गर्ने अविनाशी देवताको प्रार्थना गरिन्छ। ती देवताहरू हाम्रो प्रार्थना र यज्ञ सिद्ध गराउँदै प्रचुर मात्रामा विशिष्ट ऐश्वर्य सम्पदा प्रदान गरुन्।

आ तत्त इन्द्रायवः पनन्ताभि य ऊर्वं गोमन्तं तितृत्सान्।
सकृत्स्व१ ये पुरुपुत्रां महीं सहस्रधारां बृहतीं दुदुक्षन् ॥४॥

हे इन्द्रदेव ! शत्रुका गाईरूपी धन जित्न चाहनेले तिम्रो वन्दना गर्दछ। यो विस्तृत भूमि एक पटक उत्पन्न भयो तर बारम्बार हरियाली उत्पन्न गर्दछ। यस महान् भूमिका सहस्र धारा दुहुन चाहनेले पनि इन्द्रदेवको अर्चना गर्दछन्।

शचीव इन्द्रमवसे कृणुध्वमनानतं दमयन्तं पृतन्यून्।
ऋभुक्षणं मघवानं सुवृक्तिं भर्ता यो वज्रं नर्यं पुरुक्षुः ॥५॥

हे सत्कर्मनिष्ठ याजक हो ! कसैका सामु टाउको ननिहुराउने, युद्धको रहर गर्ने, शुत्र परास्त गर्ने,

महिमासम्पन्न, ऐश्वर्यशाली, शोभायमान स्तुतिले युक्त, युद्धका विभिन्न कलाको ज्ञान भएका र मानिसको कल्याणका लागि वज्र धारण गर्ने इन्द्रदेवलाई आफ्नो संरक्षणका लागि आह्वान गर।

**यद्वावान पुरुतमं पुराषाडा वृत्रहेन्द्रो नामान्यप्राः।**
**अचेति प्रासहस्पतिस्तुविष्मान्यदीमुश्मसि कर्तवे करत्तत्॥६॥**

शत्रुको नगर ध्वस्त पार्ने इन्द्रदेवले अति सामर्थ्यशाली शत्रु वध गरेर वृत्रहन्ता इन्द्रदेवले जलद्वारा पृथ्वी परिपूर्ण बनाएपछि मानिसहरूले अति सामर्थ्यवान् इन्द्रदेव नै सबैका अधिपति हुन् र उनले नै हाम्रो सबै कामना पूरा गराउँछन् भन्ने धारणा बनाए।

[सूक्त - ७५]

**ऋषि** - सिन्धुक्षित् प्रैयमेध। **देवता** - नदी समूह। **छन्द** - जगती।

**प्र सु वा आपो महिमानमुत्तमं कारुर्वोचाति सदने विवस्वतः।**
**प्र सप्तसप्त त्रेधा हि चक्रमुः प्र सृत्वरीणामति सिन्धुरोजसा॥१॥**

हे जलदेवता ! हामी सेवाभाव भएका यजमानका घरमा तिम्रा श्रेष्ठ महिमाको कुरो गर्दछौं। यी नदीहरू सातसात वटा भएर तीन स्थानबाट प्रवाहित भए। यी प्रवाहमध्ये सिन्धु नै सबैभन्दा ओजसम्पन्न छ।

**प्र तेऽरदद्वरुणो यातवे पथः सिन्धो यद्वाजाँ अभ्यद्रवस्त्वम्।**
**भूम्या अधि प्रवता यासि सानुना यदेषामग्रं जगतामिरज्यसि॥२॥**

हे सिन्धु ! तिमी हरियालीले परिपूर्ण प्रदेशतर्फ बहँदा वरुणदेवले गमनका लागि मार्ग विस्तृत गराए। तिमी पृथ्वीमाथि सजिलो मार्गबाट प्रवाहित छौ र जीवधारी प्राणीका जीवनको प्रमुख आधार पनि होऊ।

**दिवि स्वनो यतते भूम्योपर्यनन्तं शुष्ममुदियर्ति भानुना।**
**अभ्रादिव प्र स्तनयन्ति वृष्टयः सिन्धुर्यदेति वृषभो न रोरुवत्॥३॥**

भूमिमाथि गर्जनशील तिम्रा स्वरले आकाश गुञ्जायमान गर्दछ। तिमी आफ्ना प्रचण्ड लहरले प्रवाहित हुन्छौ। सिन्धु महानदी साँढे डुक्रिएझैं प्रचण्ड शब्द गर्दै आउँदा आकाशबाट महान् गर्जनसँगै जलको वर्षा भइरहेझैं आभास हुन लाग्दछ।

**अभि त्वा सिन्धो शिशुमिन्न मातरो वाश्रा अर्षन्ति पयसेव धेनवः।**
**राजेव युध्वा नयसि त्वमित्सिचौ यदासामग्रं प्रवतामिनक्षसि॥४॥**

माताहरू आफ्ना शिशुका नजिक र दुधालु गाई बाछाका नजिक गएझैं अन्य नदीहरू शब्द सुसाउँदै सिन्धुतिरै जान्छन्। युद्ध गर्ने राजाको जस्तै तिमी सहभागिनी दुई धारा लिएर अगाडि बढ्ने गर्दछौ।

**इमं मे गङ्गे यमुने सरस्वति शुतुद्रि स्तोमं सचता परुष्ण्या।**
**असिक्न्या मरुद्वृधे वितस्तयार्जीकीये शृणुह्या सुषोमया॥५॥**

गङ्गा, यमुना, सरस्वती, शुतुद्री, परुष्णी, असिक्नीसँगै मरुद्वृधा, वितस्ता, सुषोमा र आजीर्कीया आदि नदी हौ ! तिमीहरू सबै हाम्रो स्तोत्र सुन।

**तृष्टामया प्रथमं यातवे सजूः सुसर्त्वा रसया श्वेत्या त्या।**
**त्वं सिन्धो कुभया गोमतीं क्रुमुं मेहत्न्वा सरथं याभिरीयसे॥६॥**

हे सिन्धु महानदी ! तिमी पहिले तृष्टामयासित प्रवाहित भयौ। त्यसपछि सुसर्ता, सजु र श्वेत्यासित मिसियौ। तिमी क्रुमु, गोमतीलाई कुभा र मेहत्नुलाई आफैंसित मिसाउँछौ। यी सबै नदीसँगै एउटै रथमा आरुढ भएर जान्छौ।

**ऋजीत्येनी रुशती महित्वा परि ज्रयांसि भरते रजांसि।**
**अदब्धा सिन्धुरपसामपस्तमाश्वा न चित्रा वपुषीव दर्शता॥७॥**

सिन्धु महानदी सोझो मार्गमा हिँड्ने, सेतो वर्ण हुने, प्रदीप्तिले युक्त भएर तीव्र गतिमा प्रवाहित छन्। अत्यन्त गहिरो सिन्धु नदी नै नदीहरूमा सबैभन्दा वेगशाली छ। यो अद्भुत वेग हुने घोडाजस्तो र स्त्रीजस्तो हेर्नमा सुन्दर छ।

**स्वश्वा सिन्धुः सुरथा सुवासा हिरण्ययी सुकृता वाजिनीवती।**
**ऊर्णावती युवतिः सीलमावत्युताधि वस्ते सुभगा मधुवृधम्॥८॥**

सिन्धु महानदी गतिला अश्व, उत्तम रथ, सुन्दर वस्त्र, सुवर्णमय आभूषण, पुण्यले सम्पन्न, अन्नले

सम्पन्न र ऊनले युक्त छ। सिन्धु सधैं नै तरुणीजस्तो र अनेकौं तन्तुले युक्त छ। यो श्रेष्ठ ऐश्वर्यसम्पन्न सिन्धु मधु वृद्धि गराउने र फूलले सिँगारिएको छ।

**सुखं रथं युयुजे सिन्धुरश्विनं तेन वाजं सनिषदस्मिन्नाजौ।**
**महान्ह्यस्य महिमा पनस्यतेऽदब्धस्य स्वयशसो विरप्शिनः ॥९॥**

सुखदायी सिन्धु महानदी र अश्वयुक्त रथ चलाउँछ। त्यस रथले हामीलाई अन्न आदि प्रदान गरोस्। यस यज्ञमा सिन्धुका रथको विस्तृत महिमाको बयान गरियो। सिन्धुको रथ हिंसारहित, यशस्वी र महानताले युक्त छ।

## [सूक्त - ७६]

**ऋषि** - जरत्कर्ण ऐरावत। **देवता** - ग्रावा। **छन्द** - जगती।

**आ व ऋञ्जस ऊर्जां व्युष्टिष्विन्द्रं मरुतो रोदसी अनक्तन।**
**उभे यथा नो अहनी सचाभुवा सदःसदो वरिवस्यात उद्भिदा ॥१॥**

हे ग्रावा ! अन्न प्रदान गर्ने उषा आउनासाथ तिमीलाई प्रयोग गर्न हामी तयारी गर्दछौं। तिमी सोम दिएर इन्द्र, मरुत्गण र द्यावापृथिवीलाई अनुकूल बनाऊ। दुवै कालमा संयुक्त रहने यी द्यावापृथिवी प्रत्येक आवासमा आतिथ्य स्वीकार गरेर सबै क्षेत्रलाई उत्तम अन्नधन आदिले परिपूर्ण गरुन्।

**तदु श्रेष्ठं सवनं सुनोतनात्यो न हस्तयतो अद्रिः सोतरि।**
**विदद्ध्यर्यो अभिभूति पौंस्यं महोराये चित्तरुदे यदर्वतः ॥२॥**

हे ग्रावा ! तिमी सोम शोधित गरेर प्रस्तुत गर। हे पहाड ! तिमी हातले समाउन सकिने अश्वजस्तै अनुशासित हुन्छौ। सोम पेल्ने क्रियामा संलग्न यजमानले शत्रु जित्ने सामर्थ्य प्राप्त गर्दछन्। सोमले अश्व र प्रचुर ऐश्वर्य प्राप्ति हुन्छ।

**तदिद्ध्यस्य सवनं विवेरपो यथा पुरा मनवे गातुमश्रेत्।**
**गोअर्णसि त्वाष्ट्रे अश्वनिर्णिजि प्रेमध्वरेष्वध्वरौं अशिश्रयुः ॥३॥**

उहिले नै मनुले यज्ञमा सोमरस प्रस्तुत गरेझैं यस यज्ञमा पेलेको सोम जलरूपी कर्ममा मिसियोस्। गाई र अश्व शुद्ध गराउने त्वष्टाका पुत्रका कार्यमा अविनाशी सोमरसकै उपयोग गरिन्छ।

**अप हत रक्षसो भङ्गुरावतः स्कभायत निर्ऋतिं सेधतामतिम्।**
**आ नो रयिं सर्ववीरं सुनोतन देव्याव्यं भरत श्लोकमद्रयः ॥४॥**

हे ग्रावा ! अनिष्टकारी असुर संहार गर। पापदेवता निर्ऋतिलाई निवारण गर। दुर्मति पर हटाऊ। हामीलाई सुसन्ततियुक्त ऐश्वर्य प्रदान गर। देवताका लागि हर्ष प्रदायक यशले हामीलाई सम्पन्न बनाऊ।

**दिवश्चिदा वोऽमवत्तरेभ्यो विभ्वना चिदाश्वपस्तरेभ्यः।**
**वायोश्चिदा सोमरभस्तरेभ्योऽग्नेश्चिदर्च पितुकृत्तरेभ्यः ॥५॥**

देवताको सन्तुष्टिका लागि दिव्यलोकभन्दा पनि अधिक तेजस्वी, सुधन्वाका पुत्र विभुभन्दा अधिक क्रियाशील, वायुभन्दा पनि बढी सोमरस पेल्न सक्ने, र अग्निभन्दा पनि बढी अन्न प्रदान गर्ने ग्रावालाई अर्चना गरौं।

**भुरन्तु नो यशसः सोत्वन्धसो ग्रावाणो वाचा दिविता दिवित्मता।**
**नरो यत्र दुहते काम्यं मध्वाघोषयन्तो अभितो मिथस्तुरः ॥६॥**

यज्ञ गर्ने ऋत्विक्‌हरू सबैतिर ध्वनि गर्दै शीघ्रतापूर्वक इच्छित सोमरस निकाल्दछन्। त्यसमा यशस्वी ग्रावाले हाम्रा लागि सोम उपलब्ध गराऊन्। यस दिव्य कर्ममा मन्त्रका माध्यमबाट हामीलाई दिव्यता सम्पन्न गराऊन्।

**सुन्वन्ति सोमं रथिरासो अद्रयो निरस्य रसं गविषो दुहन्ति ते।**
**दुहन्त्यूधरुपसेचनाय कं नरो हव्या न मर्जयन्त आसभिः ॥७॥**

तिनै पहाडले सोमरस बर्साउँछन्। उनी सोमको रस दोहन गर्दछन्। उनी स्तोत्रको कामनाले प्रेरित भएर अग्निसेचनका लागि सोमरस निकाल्छन्। पेल्ने ऋषिहरू यिनका मुखमा बचेको सोम पान गरेर नै पवित्रता धारण गर्दछन्।

एते नरः स्वपसो अभूतन य इन्द्राय सुनुथ सोममद्रयः।
वामंवामं वो दिव्याय धाम्ने वसुवसु वः पार्थिवाय सुन्वते ॥८॥

हे ऋत्विक् हो ! हे पहाड ! तिमीहरू पेलेर राम्रो बनाउने काम गर्दछौ, इन्द्रदेवका निम्ति सोमरस पेल्दछौ। देवलोक प्राप्त गर्नका लागि हामीलाई सर्वश्रेष्ठ विभूति प्रदान गर। हरेक आवास र पार्थिव देहधारीका लागि योग्य सम्पदा उत्पन्न गर।

[सूक्त - ७७]

ऋषि - स्यूमरश्मि भार्गव। देवता - मरुद्गण। छन्द - त्रिष्टुप् जगती।

अभ्रप्रुषो न वाचा प्रुषा वसु हविष्मन्तो न यज्ञा विजानुषः।
सुमारुतं न ब्रह्माणमर्हसे गणमस्तोष्येषां न शोभसे ॥१॥

वादलबाट झर्ने पानीको विन्दुजस्तै स्तुतिले प्रशंसित मरुत्गण धनसम्पदा प्रदान गर्छन्। हविष्यान्नयुक्त यज्ञजस्तै सृष्टि रचनाका माध्यम मरुत्हरू नै हुन्। यी महान् शोभायुक्त मरुत्हरूको अर्चना यथार्थमा हामीले गर्न सकेनौं, सुहाउँदो स्तोत्र पनि रच्न सकेनौं।

श्रिये मर्यासो अञ्जीँरकृण्वत सुमारुतं न पूर्वीरति क्षपः।
दिवस्पुत्रास एता न येतिर आदित्यासस्ते अक्रा न वावृधुः ॥२॥

मरुत्हरू मरणशील थिए, यिनीहरूले गतिला कार्यबाटै आफूलाई दिव्य विभूतिले सजाएका हुन्। एकत्रित भएका अनेकौं सेनाले पनि मरुत्हरूलाई पराजित गर्न सक्दैनन्। यी दिव्यलोकका गतिशील पुत्रहरू अगाडि सर्दैनन्। यी अदितिका पुत्रहरू आक्रामक क्षमता हुँदा पनि आफैं अघि सर्दैनन्।

प्र ये दिवः पृथिव्या न बर्हणा त्मना रिरिच्रे अभ्रान्न सूर्यः।
पाजस्वन्तो न वीराः पनस्यवो रिशादसो न मर्या अभिद्यवः ॥३॥

मरुत्हरू आफ्ना महान् सामर्थ्यले द्युलोक र पृथ्वीभन्दा पनि अति सामर्थ्यशाली छन्। यसै किसिमले सूर्यदेव पनि अन्तरिक्षमा महिमाशाली छन्। उनी शक्तिशाली वीरजस्तै स्तोत्रको कामना गर्दछन्। दुष्ट विनाश गर्ने मानिसजस्तै पराक्रमी छन्।

युष्माकं बुध्ने अपां न यामनि विथुर्यति न मही श्रथर्यति।
विश्वप्सुर्यज्ञो अर्वागयं सु वः प्रयस्वन्तो न सत्राच आ गत ॥४॥

हे मरुत् हो ! आपसमै घात प्रतिघात गर्दै बगेको पानीझैं शीघ्र तिमीहरू हिंड्दा पृथ्वी कम्पित हुँदैन, न त दुःखी नै हुन्छ। विश्वरूपी यज्ञीय हविष्यान्न तिम्रै निम्ति प्रस्तुत छ। तिमीहरू अन्नदाता मानिसझैं हाम्रा लागि सुखदायक र सङ्गठित भएर आओ।

यूयं धूर्षु प्रयुजो न रश्मिभिर्ज्योतिष्मन्तो न भासा व्युष्टिषु।
श्येनासो न स्वयशसो रिशादसः प्रवासो न प्रसितासः परिप्रुषः ॥५॥

हे मरुत्हरू हो ! तिमीहरू सबै गतिशील रश्मिले योजित होओ र सूर्य आदिको आलोकझैं तेजस्वी, गरुड पक्षीझैं स्वयं यश विस्तार गर्ने, पराक्रमशाली र शत्रुप्रति उग्र छौ। बटुवाजस्तै तिमीहरू सबै तिरबाट गतिशील भएर जलको वर्षा गराउँछौ।

प्र यद्वहध्वे मरुतः पराकाद्यूयं महः संवरणस्य वस्वः।
विदानासो वसवो राध्यस्याराच्चिद् द्वेषः सनुतर्युयोत ॥६॥

हे मरुत् हो ! तिमीहरू अति टाढाबाट आउँदा महिमामय, उत्तम, धारण गर्न योग्य ऐश्वर्य प्रदान गर्दछौ। हे वसुहरू हो ! तिमीहरू विद्रोही शत्रु परै विनाश गर।

य उदृचि यज्ञे अध्वरेष्ठा मरुद्भ्यो न मानुषो ददाशत्।
रेवत्स वयो दधते सुवीरं स देवानामपि गोपीथे अस्तु ॥७॥

अनुष्ठान सम्पन्न गरेर मरुत्हरूझैं काम लाग्ने दान दिने व्यक्तिले श्रेष्ठ, वीर सन्तानले युक्त, अन्न र आयु प्राप्त गर्दछन्। ती वीर व्यक्तिले यज्ञमा स्थान प्राप्त गर्दछन्।

ते हि यज्ञेषु यज्ञियास ऊमा आदित्येन नाम्ना शम्भविष्ठाः।
ते नोऽवन्तु रथतूर्मनीषां महश्च यामन्नध्वरे चकानाः ॥८॥

यी मरुत्हरू यज्ञजस्तै हुन् र यज्ञका संरक्षक हुन्। यिनीहरू सबैका लागि कल्याणकारी भावनाले युक्त भएर आदित्य नामले सम्बोधित छन्। यिनीहरूले हामीलाई संरक्षण दिऊन्। यज्ञस्थलमा चाँडै रथमा जाने इच्छा भएका मरुत्हरूले हाम्रा स्तुतिको रक्षा गरुन्। यज्ञमा उनीहरू अभीष्ट हविष्यान्नको अभिलाषा गर्दछन्।

[सूक्त - ७८]

**ऋषि** - स्यूमरश्मि भार्गव। **देवता** - मरुद्गण। **छन्द** - त्रिष्टुप् जगती।

**विप्रासो न मन्मभिः स्वाध्यो देवाव्योऽ३ न यज्ञैः स्वप्नसः।**
**राजानो न चित्राः सुसन्दृशः क्षितीनां न मर्या अरेपसः ॥१॥**

मरुत्हरू ज्ञानी स्तोताजस्तै स्तुतिले प्रशंसित भएर हाम्रा प्रार्थनामा ध्यान दिऊन्। देवता हर्षित गराउने यज्ञीय कार्यमा खट्नून्। मरुत्हरू राजाजस्तै पूजनीय, दर्शनीय र गृहपति मानिसजस्तै पापरहित र शोभायमान छन्।

**अग्निर्न ये भ्राजसा रुक्मवक्षसो वातासो न स्वयुजः सद्यऊतयः।**
**प्रज्ञातारो न ज्येष्ठाः सुनीतयः सुशर्माणो न सोमा ऋतं यते ॥२॥**

मरुत्हरू अग्निजस्तै तेजले युक्त, सुनौलो वक्ष भएका, वायुजस्तै शीघ्र गतिशील, अर्काको सहायता गर्ने, श्रेष्ठ ज्ञानले सम्पन्न, ज्ञानीभैँ वन्दनीय, सुन्दर नेत्रले युक्त श्रेष्ठ सुखको सम्पादन गर्ने सोमजस्तै शोभायुक्त मुख भएका छन्। यस्ता गुणले सम्पन्न ती मरुत्देवताहरू यज्ञमा उपस्थित होऊन्।

**वातासो न ये धुनयो जिगत्नवोऽग्नीनां न जिह्वा विरोकिणः।**
**वर्मण्वन्तो न योधाः शिमीवन्तःपितॄणां न शंसाः सुरातयः ॥३॥**

मरुत्हरू वायुभैँ शत्रु प्रकम्पित गराउँछन्, वेगवान् छन्, अग्निको ज्वालाजस्तै तेजस्वी कान्तिले युक्त छन्, कवच लगाएको शूरवीरजस्तै शौर्यले सम्पन्न छन् र पितृको वाणीजस्तै उदार दानी छन्। ती मरुत्हरू हाम्रा यज्ञमा आऊन्।

**रथानां न येऽराः सनभयो जिगीवांसो न शूरा अभिद्यवः।**
**वरेयवो न मर्या घृतप्रुषोऽभिस्वर्तारो अर्कं न सुष्टुभः ॥४॥**

मरुत्हरू रथका चक्रमा हुने अरभैँ केन्द्रसित आबद्ध छन्, विजयशील शूरवीरभैँ तेजयुक्त छन्, दानी मानिसभैँ जलसेचक छन् र सुन्दर स्तोत्र गाउनेभैँ श्रेष्ठ शब्दले युक्त छन्। ती मरुत्हरू हाम्रा यज्ञमा आऊन्।

**अश्वासो न ये ज्येष्ठास आशवो दिधिषवो न रथ्यः सुदानवः।**
**आपो न निम्नैरुदभिर्जिगत्नवो विश्वरूपा अङ्गिरसो न सामभिः ॥५॥**

मरुत्हरू श्रेष्ठ अश्वजस्तै वेगशील, ऐश्वर्यशालीजस्तै रथका स्वामी, उदार दानी छन्। उनीहरू नदीको पानीजस्तै ओरालोतिर प्रवाहित, विभिन्न रूपले युक्त र अङ्गिराहरूकैं जस्तो सामगान गर्दछन्। ती मरुत्हरू हाम्रा यज्ञमा आइदिऊन्।

**ग्रावाणो न सूरयः सिन्धुमातर आदर्दिरासो अद्रयो न विश्वहा।**
**शिशूला न क्रीडयः सुमातरो महाग्रामो न यामन्नुत त्विषा ॥६॥**

मरुत्हरू जल उत्पादन गर्ने मेघजस्तै जलप्रवाहका निर्माता हुन्। यी सबै किसिमका शत्रुलाई नाश गर्ने, सधैं शस्त्रजस्तै आदरणीय छन्। मरुत्हरू श्रेष्ठ स्नेहयुक्त माताभैँ क्रीडा मन पराउँछन् र विशाल जनसमूहजस्तै गतिशील एवं तेजस्वी छन्। ती मरुत्हरू हाम्रा यज्ञमा आइदिऊन्।

**उषसां न केतवोऽध्वरश्रियः शुभंयवो नाञ्जिभिर्व्यश्वितन्।**
**सिन्धवो न ययियो भ्राजदृष्टयः परावतो न योजनानि ममिरे ॥७॥**

उषा कालका रश्मिजस्ता मरुत्हरू यज्ञका आश्रयी हुन्। मङ्गल कामना गर्ने, असल व्यक्तिजस्तै अलङ्कृत छन्। यिनीहरू नदीभैँ निरन्तर गतिशील, तेजस्वी आयुध धारण गर्ने र दूरगामी मार्गमा जाने बटुवाजस्ता भएर वेगपूर्वक ठूलो ठाउँ कटेर जान्छन्। ती मरुत्हरू हाम्रा यज्ञमा आइदिऊन्।

**सुभागान्नो देवाः कृणुता सुरत्नानस्मान्त्स्तोतॄन्मरुतो वावृधानाः।**
**अधि स्तोत्रस्य सख्यस्य गात सनाद्धि वो रत्नधेयानि सन्ति ॥८॥**

हे देवतास्वरूप मरुत्हरू हो ! स्तुतिले आनन्दित भएर तिमीहरू हामीलाई श्रेष्ठ ऐश्वर्य र श्रेष्ठ रत्नका स्वामी बनाओ। तिमीहरू हाम्रा मैत्री भावनाले युक्त स्तोत्रपाठ स्वीकार गर। तिमीहरू सधैं रत्न दान गरिरहन्छौ।

[सूक्त – ७९]

**ऋषि** – अग्नि वैश्वानर सप्तिवाजम्भर। **देवता** – अग्नि। **छन्द** – त्रिष्टुप्।

**अपश्यमस्य महतो महित्वममर्त्यस्य मर्त्यासु विक्षु।**
**नाना हनू विभृते सं भरेते असिन्वती बप्सती भूर्यत्तः ॥१॥**

मरणशील मानिसमध्ये हामी अविनाशी अग्निको महान् सामर्थ्य अनुभव गर्दछौं। यिनका दुवै ओठरूपी ज्वाला विभिन्न किसिमले पूर्णता प्राप्त गर्दछ। यिनी चपाउने काम नगरीकन नै काठ आदि खान्छन्।

**गुहा शिरो निहितमृधगक्षी असिन्वन्नत्ति जिह्वया वनानि।**
**अत्राण्यस्मै पड्भिः सं भरन्त्युत्तानहस्ता नमसाधि विक्षु ॥२॥**

अग्निदेवको टाउको गोप्य स्थानमा रहेको छ। यिनका आँखा भिन्नभिन्न स्थानमा छन्। यिनी नचपाईकनै ज्वालाले नै समिधा सेवन गर्दछन्। हामी विभिन्न पद वा चरणमा हात उठाएर नमस्कार गर्दै यिनलाई सन्तुष्ट गराउँछौं।

**प्र मातुः प्रतरं गुह्यमिच्छन्कुमारो न वीरुधः सर्पदुर्वीः।**
**ससं न पक्वमविदच्छुचन्तं रिरिह्वांसं रिप उपस्थे अन्तः ॥३॥**

अग्निदेव बालकजस्तै पृथ्वीमातामाथि रहेर लहरा भक्षण गर्न पाउने कामना गर्दछन्। यिनी तिनका जरासम्म पुग्दछन्। अग्निदेव स्वयं पृथ्वीका भित्री सतहको पक्वान्नजस्तै दीप्तिमान् काष्ठ सेवन गर्ने विधि जान्दछन्।

**तद्वामृतं रोदसी प्र ब्रवीमि जायमानो मातरा गर्भो अत्ति।**
**नाहं देवस्य मर्त्यश्चिकेताग्निरङ्ग विचेताः स प्रचेताः ॥४॥**

हे द्युलोक र पृथ्वीलोक ! हामी तिमीहरूसित अरणीबाट उत्पन्न, गर्भमा रहेको शिशुजस्ता अग्निले आफ्ना मातापितारूपी दुवै अरणी सेवन गर्दछन् भन्ने यथार्थमा आधारित कुरो भन्दछौं। हामी मानिस, देवतारूपी अग्निको विशेषताबाट अनभिज्ञ छौं। हे वैश्वानर ! तिमी विभिन्न ज्ञानले सम्पन्न, उत्तम ज्ञानयुक्त छौ।

**यो अस्मा अन्नं तृष्वा३ दधात्याज्यैर्घृतैर्जुहोति पुष्यति।**
**तस्मै सहस्रमक्षभिर्वि चक्षेऽग्ने विश्वतः प्रत्यङ्ङसि त्वम् ॥५॥**

अग्निका निम्ति शीघ्रतापूर्वक हविष्यान्न समर्पित गर्ने, गाईको घिउ अथवा सोमरसले अग्निमा यज्ञ गर्ने र समिधाले अग्नि प्रज्वलित गर्ने यजमानलाई अग्निदेव आफ्ना हजारौं किसिमका असीम ज्वालाले हेर्दछन्। हे अग्निदेव ! हाम्रा लागि अनुकूल होऊ।

**किं देवेषु त्यज एनश्चकर्थाग्ने पृच्छामि नु त्वामविद्वान्।**
**अक्रीळन् क्रीळन्हरिरत्तवेऽदन्वि पर्वशश्चकर्त गामिवासिः ॥६॥**

हे अग्निदेव ! तिमीले कहिल्यै देवताहरूप्रति क्रोध गरेका छौ ? चर्म वा लहरा शस्त्रले टुक्राटुक्रा गरेझैं कतै क्रीडा गर्दै र कतै नगर्दै हरणशील अग्निदेवले खाद्य सामग्री सेवन गर्दा टुक्राटुक्रा पार्दछन्।

**विषूचो अश्वान्युयुजे वनेजा ऋजीतिभी रशनाभिर्गृभीतान्।**
**चक्षदे मित्रो वसुभिः सुजातः समानृधे पर्वभिर्वावृधानः ॥७॥**

जङ्गलमा हुर्किएका अग्निदेव, सर्वत्र गतिमान्, सरल मार्गगामी भोगको आकाङ्क्षा भएका अश्व वशमा गरेर सुनियोजित बनाउँछन्। हाम्रा मित्ररूपी अग्निदेव वसुहरूबाट प्रदीप्त भएर प्रस्फुटित हुन्छन्। उनी पर्वरूपी समयले सम्पन्न भएर बढ्दछन्।

[सूक्त – ८०]

**ऋषि** – अग्नि वैश्वानर सप्तिवाजम्भर। **देवता** – अग्नि। **छन्द** – त्रिष्टुप्।

**अग्निः सप्तिं वाजंभरं ददात्यग्निर्वीरं श्रुत्यं कर्मनिःष्ठाम्।**
**अग्नी रोदसी वि चरत्समञ्जन्नग्निर्नारीं वीरकुक्षिं पुरन्धिम् ॥१॥**

वेगशील, सङ्ग्राममा शत्रु जित्ने र अन्नप्रदाता अश्व अग्निदेवले प्रदान गर्दछन्। यिनी यज्ञशाली, वेदज्ञ र यज्ञरूपी सत्कर्मप्रेमी पुत्र प्रदान गर्दछन्। अग्निदेव द्युलोक र भूलोक दुवैलाई प्रकाशित गर्दै सञ्चरित हुन्छन्। यी अग्निदेव स्त्रीलाई वीर सन्तान जन्माउने बनाउँछन्।

अग्नेरप्नसः समिदस्तु भद्राग्निर्मही रोदसी आ विवेश।
अग्निरेकं चोदयत्समत्स्वग्निर्वृत्राणि दयते पुरूणि ॥२॥

अग्नि प्रज्वलित गराउने समिधा कल्याणकारी होऊन्। अग्निदेव आफ्ना तेजले द्युलोक र पृथ्वीका सबै ठाउँमा व्याप्त रहेका छन्। अग्निदेव युद्धक्षेत्रमा आफ्ना साधकको सहायक बनेर उसलाई विजयी बनाउँछन् र अनेकौं शत्रु विनाश गरिदिन्छन्।

अग्निर्ह त्यं जरतः कर्णमावाग्निरद्भ्यो निरदहज्जरूथम्।
अग्निरत्रिं घर्म उरुष्यदन्तरग्निर्नृमेधं प्रजयासृजत्सम् ॥३॥

अग्निदेवले वास्तवमा जरत्कर्ण नामका प्रख्यात ऋषिको सुरक्षा गरे। उनलाई जलबाट बाहिर निकालेर अग्निले जरूथ नामका राक्षसलाई भस्मीभूत गराए। अग्निदेवले तातिएका कुण्डमा खसेका अत्रि ऋषिलाई निकाले। अग्निदेवले नृमेध ऋषिलाई सन्तान प्रदान गरेका थिए।

अग्निर्दाद् द्रविणं वीरपेशा अग्निर्ऋषिं यः सहस्रा सनोति।
अग्निर्दिवि हव्यमा ततानाग्नेर्धामानि विभृता पुरुत्रा ॥४॥

अग्निदेव श्रेष्ठ, ज्योतिष्मान् ऐश्वर्य प्रदान गर्दछन्। अग्निदेव मन्त्रद्रष्टा ऋषिका लागि सहस्र गाई प्रदान गर्दछन्। यजमानले प्रदान गरेको आहुति अग्निदेव दिव्यलोकमा लिएर जान्छन्। यसबाट उनको ज्वालारूपी शरीर अनेकौं लोकमा विस्तृत हुन्छ।

अग्निमुक्थैर्ऋषयो वि ह्वयन्तेऽग्निं नरोयामनि बाधितासः।
अग्निं वया अन्तरिक्षे पतन्तोऽग्निः सहस्रा परि याति गोनाम् ॥५॥

सर्वप्रथम ऋषिहरू अग्निदेवको प्रार्थना वेदमन्त्रले गर्दछन्। समरक्षेत्रमा शत्रुबाट पीडित मानिस विजय पाउन अग्निदेवलाई आह्वान गर्दछन्। आकाशमा उड्दै गरेका पक्षीले राति अग्नि देख्दछन्। अग्निदेव हजारौं गाईयुक्त भएर चारै दिशामा विचरण गर्छन्।

अग्निं विश ईडते मानुषीर्या अग्निं मनुषो नहुषो वि जाताः।
अग्निर्गान्धर्वी पथ्यामृतस्याग्नेर्गव्यूतिर्घृत आ निषत्ता ॥६॥

साधारण मानिसले पनि अग्निदेवको अर्चना गर्दछन्। राजा नहुषका प्रजा अग्निदेवलाई अनेकौं किसिमले प्रार्थना गर्दछन्। अग्निदेव यज्ञीय मार्गका निम्ति कल्याणकारी वेदको वाणी सुन्दछन्। अग्निको मार्ग घिउसँग संलग्न छ।

अग्नये ब्रह्म ऋभवस्ततक्षुरग्निं महामवोचामा सुवृक्तिम्।
अग्ने प्राव जरितारं यविष्ठाग्ने महि द्रविणमा यजस्व ॥७॥

ऋभुहरूले अग्निदेवका निम्ति स्तोत्र रचना गरे। हामी सबै महिमामय अग्निदेवको प्रार्थना गर्दछौं। हे तरुण अग्निदेव ! तिमी स्तोतालाई संरक्षण प्रदान गर। हे अग्निदेव ! हामीलाई तिमी महान् ऐश्वर्य प्रदान गर।

[सूक्त – ८१]

ऋषि – विश्वकर्मा भौवन। देवता – विश्वकर्मा। छन्द – त्रिष्टुप्।

य इमा विश्वा भुवनानि जुह्वदृषिर्होता न्यसीदत् पिता नः।
स आशिषा द्रविणमिच्छमानः प्रथमच्छदवराँ आ विवेश ॥१॥

द्रष्टाका रूपमा रहेका विश्वकर्मा ऋषि पिताकै जस्तो स्थितिमा रहेर समस्त लोकका निम्ति र समस्त लोकले दिएको आहुति समर्पित गर्दछन्। यिनी सङ्कल्पले मात्रै विभिन्न सम्पदालाई इच्छित रूप प्रदान गर्दै पहिले उत्पन्न भएका जगत्लाई संव्याप्त गराउँछन् र अन्यत्र प्रविष्ट हुन्छन्।

किं स्विदासीदधिष्ठानमारम्भणं कतमत्स्वित्कथासीत्।
यतो भूमिं जनयन्विश्वकर्मा वि द्यामौर्णोन्महिना विश्वचक्षाः ॥२॥

सृष्टिको निर्माणभन्दा पहिले परमात्मा कुन आश्रयमा अडिएका थिए ? सृष्टिको निर्माणमा प्रयोग भएका मूल द्रव्य के र कस्ता थियो ? त्यसबाट सर्वद्रष्टा विश्वकर्मा परमात्माले यस सुविशाल पृथ्वी र महान् द्युलोकको सिर्जना महान् सामर्थ्यले कहाँ बसेर गरे ?

विश्वतश्चक्षुरुत विश्वतोमुखोविश्वतोबाहुरुत विश्वतस्पात्।
सं बाहुभ्यां धमति सं पतत्रैर्द्यावाभूमी जनयन्देव एकः ॥३॥

सर्वत्र आँखा भएका, सबैतिर मुख भएका, सबैतिर भुजा भएका र सबैतिर चरण भएका उनै

अद्वितीय परमात्माले आफ्ना भुजाले गतिशील पृथ्वी र द्युलोक आश्रयविनै निर्माण गरेका थिए र उचित रूपमा तिनलाई सञ्चालित गर्ने उनी एक्लै थिए।

**किं स्विद्वनं क उ स वृक्ष आस यतो द्यावापृथिवी निष्टतक्षुः।**
**मनीषिणो मनसा पृच्छतेदु तद्यदध्यतिष्ठद्भुवनानि धारयन् ॥४॥**

कस्तो वन र कस्ता वृक्षबाट निर्माण सामग्री लिएर विश्वकर्मा ईश्वरले पृथिवी र द्युलोक निर्माण गरे ? हे विवेकी पुरुष हो ! समस्त भुवन धारण गर्दै ती विश्वकर्मादेव कुन ठाउँमा अडिएका छन् भनेर आआफ्ना मनका शक्तिसित सोध।

**या ते धामानि परमाणि यावमा या मध्यमा विश्वकर्मन्नुतेमा।**
**शिक्षा सखिभ्यो हविषि स्वधावः स्वयं यजस्व तन्वं वृधानः ॥५॥**

हे विश्वको रचना गर्ने परमात्मा ! हे सबैलाई धारणपोषण गर्ने ईश्वर ! तिम्रा उच्चतम, मध्यम वा तल्ला धामका विषयमा हामीलाई मित्रको भावना राखेर सिकाऊ। सबै जीवलाई तिमीले वृद्धि प्रदान गरेपछि नै हामी उत्तम हविष्यान्नद्वारा यजन गरौं।

**विश्वकर्मन् हविषा वावृधानः स्वयं यजस्व पृथिवीमुत द्याम्।**
**मुह्यन्त्वन्ये अभितो जनास इहास्माकं मघवा सूरिरस्तु ॥६॥**

हे विश्वका स्रष्टा परमात्मा ! हामीले दिइएका हविष्यान्नले प्रसन्न भएर पृथ्वीले जस्तै सबै आश्रितहरूको हितका लागि यज्ञमा स्वयं यजन गर। तिमी सबै शत्रु आफ्ना बलले मोहग्रस्त गराऊ। यज्ञमा ऐश्वर्यसम्पन्न देवता हाम्रा लागि श्रेष्ठ फल प्रदान गरुन्।

**वाचस्पतिं विश्वकर्माणमूतये मनोजुवं वाजे अद्या हुवेम।**
**स नो विश्वानि हवनानि जोषद्विश्वशम्भूरवसे साधुकर्मा ॥७॥**

हामी आज जीवनयज्ञमा आफ्नो रक्षाका लागि ज्ञानका अधिपति सृष्टिका रचयिता परमेश्वरलाई आह्वान गर्दछौं। सत्कर्ममा प्रेरणा दिएर कल्याण गर्ने ती विश्वकर्माले हामीबाट प्रदान गरिएको हविष्यान्न हाम्रो रक्षाका लागि प्रेमपूर्वक ग्रहण गरुन्।

[सूक्त - ८२]

**ऋषि** - विश्वकर्मा भौवन। **देवता** - विश्वकर्मा। **छन्द** - त्रिष्टुप्।

**चक्षुषः पिता मनसा हि धीरो घृतमेने अजनन्नम्माने।**
**यदेदन्ता अददृहन्त पूर्व आदिद् द्यावापृथिवी अप्रथेताम् ॥१॥**

उहिल्यै द्यावापृथिवीको विस्तार भएर तिनका बाहिरीभित्री भाग बलियोसँग अडिएपछि चक्षुसम्पन्न पिताले नमनशील घृतको सृष्टि गरे।

**विश्वकर्मा विमना आद्विहाया धाता विधाता परमोत संदृक्।**
**तेषामिष्टानि समिषा मदन्ति यत्रा सप्तऋषीन्पर एकमाहुः ॥२॥**

विश्वकर्मादेव विशिष्ट महाशक्तिसम्पन्न, व्यापक विश्वका निर्माता, धारणकर्ता, महान् र सर्वद्रष्टा हुन्। उनैलाई प्राणका सप्तधाराका रूपमा रहेका सप्तऋषि पनि भनिन्छ। तिनको अभीष्ट पूर्ति उनकै पोषणशक्तिले हुन्छ। ती एउटै अद्वितीय हुन्।

**यो नः पिता जनिता यो विधाता धामानि वेद भुवनानि विश्वा।**
**यो देवानां नामधा एक एव तं सम्प्रश्नं भुवना यन्त्यन्या ॥३॥**

परमेश्वर हामी सबैका उत्पन्न र पालन गर्ने हुन्, उनी सबैका धारणकर्ता हुन्। उनी सम्पूर्ण लोकका स्थानका ज्ञाता हुन् र एउटै भएर पनि विविध देवताको विभिन्न नाम धारण गर्दछन्। सबै लोकका प्राणी आखिरमा उनैसित पुग्दछन्।

**त आयजन्त द्रविणं समस्मा ऋषयः पूर्वे जरितारो न भूना।**
**असूर्ते सूर्ते रजसि निषत्ते ये भूतानि समकृण्वन्निमानि ॥४॥**

अन्तरिक्षमा प्रत्यक्ष अथवा परोक्ष रूपले निवास गर्ने परमेश्वरले समस्त प्राणीको रचना गरेका हुन्। उनै स्रष्टाका लागि हाम्रा पूर्वज ऋषिहरू स्तुति गर्दै यज्ञमा महान् वैभव समर्पित गर्दछन्।

**परो दिवा पर एना पृथिव्या परो देवेभिरसुरैर्यदस्ति।**
**कं स्विद्गर्भं प्रथमं दध्र आपो यत्र देवाः समपश्यन्त विश्वे ॥५॥**

हृदयमाको ईश्वरीय तत्त्व द्युलोकभन्दा पर छ, पृथ्वीभन्दा पर छ, देवता र असुरभन्दा पनि पर छ।

जल तत्त्वले सर्वप्रथम कुन गर्भ धारण गर्‍यो ? त्यो गर्भ कस्तो विलक्षण थियो ? उहिलेका ऋषिहरू त्यस परमतत्त्वको उचित दर्शन पाउनासाथ देवत्वको परमपद प्राप्त गर्दथे।

**तमिद्गर्भं प्रथमं दध्र आपो यत्र देवाः समगच्छन्त विश्वे।**
**अजस्य नाभावध्येकमर्पितं यस्मिन्विश्वानि भुवनानि तस्थुः ॥६॥**

सृष्टिका आदिदेखि नै विद्यमान त्यस परमतत्त्वले अपतत्त्वको गर्भ धारण गरेको हो। त्यहाँ सम्पूर्ण देवशक्तिको आश्रयस्थल छ। यस्ता अजन्मा ईश्वरका केन्द्रमा एउटै परम तत्त्व अडिएको छ, त्यसैबाट समस्त भुवन रक्षित भएर अडिएको छ।

**न तं विदाथ य इमा जजानान्यद्युष्माकमन्तरं बभूव।**
**नीहारेण प्रावृता जल्प्या चासुतृप उक्थशासश्चरन्ति ॥७॥**

हे मानिस हो ! यस सम्पूर्ण ब्रह्माण्डको रचना गर्ने परमेश्वरलाई तिमीहरू जान्दैनौ। परमतत्त्वका रूपमा रहेका तिनी सबैबाट भिन्न भएर पनि सबैभित्र प्रतिष्ठित छन्। अज्ञानको बाक्लो अन्धकारमा डुबेका, केवल गफ र विवादमा लागेर जिउ जोगाउने र पोस्ने चिन्ताले सताइएकाहरूले त्यस्ता परमेश्वरका सम्बन्धमा व्यर्थ विवाद गर्दै विचरण गर्दछन्, साक्षात्कार गर्न सक्दैनन्।

[सूक्त - ८३]

**ऋषि** - मन्यु तापस। **देवता** - मन्यु। **छन्द** - त्रिष्टुप् जगती।

**यस्ते मन्योऽविधद्वज्र सायक सह ओजः पुष्यति विश्वमानुषक्।**
**साह्याम दासमार्यं त्वया युजा सहस्कृतेन सहसा सहस्वता ॥१॥**

हे वज्र वा तीखो बाणजस्तो र क्रोधका प्रतीक, अभिमानी मन्युदेव ! तिमीलाई हरण गर्ने साधक शक्ति र सामर्थ्य निरन्तर परिपुष्ट गराउँछन्। बलवर्द्धक र विजयप्रदाता तिम्रा सहयोगले हामी दास र आर्यजस्ता विरोधीलाई आफ्ना अधीनमा राख्दछौं।

**मन्युरिन्द्रो मन्युरेवास देवो मन्युर्होता वरुणो जातवेदाः।**
**मन्युं विश ईळते मानुषीर्याः पाहि नो मन्योतपसा सजोषाः ॥२॥**

मन्यु नै इन्द्रदेव हुन्, यज्ञ सञ्चालन गर्ने वरुण र जातवेदा अग्नि हुन्। सम्पूर्ण मानवी प्रजाले मन्युको प्रशंसा गर्दछन्। हे मन्यु ! स्नेहयुक्त भएर तपद्वारा हाम्रो संरक्षण गर।

**अभीहि मन्यो तवसस्तवीयान्तपसा युजा वि जहि शत्रून्।**
**अमित्रहा वृत्रहा दस्युहा च विश्वा वसून्या भरा त्वं नः ॥३॥**

हे महान् सामर्थ्यशाली मन्यु ! यहाँ आऊ। तिमी तपस्याको सामर्थ्यले युक्त भएर शत्रुको विध्वंस गर। तिमी शत्रुविनाशक, वृत्रहन्ता र दस्यु दलन गर्ने हौ। हामीलाई सबै किसिमको ऐश्वर्य प्रदान गर।

**त्वं हि मन्यो अभिभूत्योजाः स्वयम्भूर्भामो अभिमातिषाहः।**
**विश्वचर्षणिः सहुरिः सहावानस्मास्वोजः पृतनासु धेहि ॥४॥**

हे मन्यु ! तिमी विजयी शक्तिले सम्पन्न, आफ्ना सामर्थ्यले बढ्ने, तेजयुक्त, शत्रु पराजित गराउने, सबैको निरीक्षण गर्नमा सक्षम र बलशाली छौ। सङ्ग्राम क्षेत्रमा तिमी हामीभित्र ओज स्थापना गर।

**अभागः सन्नप परेतो अस्मि तव क्रत्वा तविषस्य प्रचेतः।**
**तं त्वा मन्यो अक्रतुर्जिहीळाहं स्वा तनूर्बलदेयाय मेहि ॥५॥**

हे श्रेष्ठ ज्ञानले सम्पन्न मन्यु ! तिमीसित सहभागी नभएका कारणले नै हामी छुट्टिएर पर पुगिसकेका छौं। महिमामय तिमीबाट विमुख भएर हामी कर्महीन भइसकेका छौं। सङ्कल्पशील भएर तिम्रा निकट आउँछौं। हाम्रा शरीरमा बल सञ्चार गर्न आऊ।

**अयं ते अस्म्युप मेह्यर्वाङ् प्रतीचीनः सहुरे विश्वधायः।**
**मन्यो वज्रिन्नभि मामा ववृत्स्व हनाव दस्यूँरुत बोध्यापेः ॥६॥**

हे मन्यु ! हामी तिम्रा नजिकै उपस्थित छौं। तिमी आफ्नो अनुकूलतापूर्वक हाम्रा नजिक आघात सहन र सबैलाई धारण गर्न समर्थ छौ। हे वज्रधारी मन्यु ! तिमी हाम्रा नजिक आऊ, हामीलाई मित्र ठान, त्यसो भएपछि हामी दुष्टलाई मार्न सकौं।

**अभि प्रेहि दक्षिणतो भवा मेऽधा वृत्राणि जङ्घनाव भूरि।**
**जुहोमि ते धरुणं मध्वो अग्रमुभा उपांशु प्रथमा पिबाव ॥७॥**

हे मन्यु ! तिमी हाम्रा नजिक आऊ। हाम्रा दाहिनेतिर बसिदेऊ। हामी दुवैले मिलेर शत्रु संहार गर्न समर्थ हुनेछौं। तिम्रा लागि मधुर र श्रेष्ठ धारक सोम हवन गर्दछौं। हामी दुवै एकान्तमा सर्वप्रथम यो रस पान गरौं।

## [सूक्त – ८४]

**ऋषि** – मन्यु तापस। **देवता** – मन्यु। **छन्द** – जगती त्रिष्टुप्।

**त्वया मन्यो सरथमारुजन्तो हर्षमाणासो धृषिता मरुत्वः।**
**तिग्मेषव आयुधा संशिशाना अभि प्र यन्तु नरो अग्निरूपाः ॥१॥**

हे मन्यु ! तिम्रा सहयोगले रथमा आरुढ भएर अनन्दित र प्रसन्नचित्त हुँदै आफ्ना आयुध धारिलो बनाएर अग्निको जस्तै तीक्ष्ण दहनशक्ति उत्पन्न गर्ने मरुत्गण आदि युद्धका नायक हाम्रो सहायताका लागि युद्धक्षेत्रमा जाऊन्।

**अग्निरिव मन्यो त्विषितः सहस्व सेनानीर्नः सहुरे हूत एधि।**
**हत्वाय शत्रून्वि भजस्व वेद ओजो मिमानो वि मृधो नुदस्व ॥२॥**

हे मन्यु ! अग्निजस्तै प्रदीप्त भएर शत्रु पराजित गर। हे सहनशक्तिले युक्त मन्यु ! तिम्रो आह्वान गरिएको छ। तिमी हाम्रा सङ्ग्राममा नायक बनिदेऊ। शत्रु संहार गरेर उनको सम्पदा हामीलाई देऊ। हामीलाई बल प्रदान गरेर शत्रु पर भगाइदेऊ।

**सहस्व मन्यो अभिमातिमस्मे रुजन्मृणन्प्रमृणन् प्रेहि शत्रून्।**
**उग्रं ते पाजो नन्वा रुरुध्रे वशी वशं नयस एकज त्वम् ॥३॥**

हे मन्यु ! हाम्रा विरुद्धमा सक्रिय शत्रुलाई तिमी परास्त गर। दुःख दिँदै र कुच्याउँदै शत्रुमाथि आक्रमण गर। तिम्रो प्रभावपूर्ण क्षमता रोक्न कसले पो सक्छ र ? हे अद्वितीय मन्यु ! तिमी स्वयं संयमशील भएर शत्रुलाई नियन्त्रणमा गर्दछौ।

**एकोबहूनामसि मन्यवीडितो विशंविशं युधये सं शिशाधि।**
**अकृत्तरुक्त्वया युजा वयं द्युमन्तं घोषं विजयाय कृण्महे ॥४॥**

हे मन्यु ! तिमी एक्लै नै अनेकौंबाट सत्कारयोग्य छौ। तिमी युद्धका निमित्त प्रत्येक मानिसलाई तीक्ष्ण बनाऊ। हे अक्षय प्रकाशयुक्त मन्यु ! तिम्रो मित्रताका सहयोगले हामी हर्षित भएर विजय प्राप्तिका लागि सिंहनाद गर्दछौं।

**विजेषकृदिन्द्रइवानवब्रवोऽस्माकं मन्यो अधिपा भवेह।**
**प्रियं ते नाम सहुरे गृणीमसि विद्मा तमुत्सं यत आबभूथ ॥५॥**

हे मन्यु ! इन्द्रजस्तै विजेता, असन्तुलित नबोल्ने तिमी हाम्रा अधिपति हौ। हे सहनशील मन्यु ! तिम्रा निम्ति प्रिय स्तोत्र उच्चारण गर्दछौं। तिमी उत्पन्न हुने स्रोत थाहा छ।

**आभूत्या सहजा वज्र सायक सहो बिभर्ष्यभिभूत उत्तरम्।**
**क्रत्वा नो मन्योसह मेद्येधि महाधनस्य पुरुहूत संसृजि ॥६॥**

हे शत्रु संहार गर्ने वज्रजस्तै मन्यु ! शत्रु विनाश गर्नु तिम्रो सहज स्वभाव हो। हे शत्रु पराजित गर्ने मन्यु ! तिमी श्रेष्ठ तेज ग्रहण गर्दछौ। कर्मशक्तिका साथ युद्धक्षेत्रमा तिमी हाम्रा निम्ति सहायक होऊ। तिम्रो आह्वान असङ्ख्य वीरले गर्दछन्।

**संसृष्टं धनमुभयं समाकृतमस्मभ्यं दत्तां वरुणश्च मन्युः।**
**भियं दधाना हृदयेषु शत्रवः पराजितासो अप नि लयन्ताम् ॥७॥**

हे वरुण र मन्यु ! उत्पादित र सङ्ग्रहित ऐश्वर्य हामीलाई प्रदान गर। भयभीत हृदयका शत्रु पराजित भएर पर भागून्।

## [सूक्त – ८५]

**ऋषि** – सूर्या सावित्री। **देवता** – सोम सूर्या चन्द्रमा। **छन्द** – अनुष्टुप् त्रिष्टुप् जगती।

**सत्येनोत्तभिता भूमिः सूर्येणोत्तभिता द्यौः।**
**ऋतेनादित्यास्तिष्ठन्ति दिवि सोमो अधि श्रितः ॥१॥**

देवताहरूमा सत्यस्वरूप ब्रह्माले पृथ्वीलाई आकाशमा स्थापित गरे। सूर्यदेव द्युलोक अड्याउँछन्। यज्ञको आहुतिका आश्रयमा देवशक्ति रहेको हुन्छ। सोम द्युलोकभन्दा माथि रहेको छ।

सोमेनादित्या बलिनः सोमेन पृथिवी मही।
अथो नक्षत्राणामेषामुपस्थे सोम आहितः ॥२॥

आदित्य आदि देवता सोमका कारण नै बलशाली छन्। सोमले नै पृथ्वी महिमाशाली हुन्छ। यी नक्षत्रका बीचमा पनि सोमलाई स्थापित गरिएको छ।

सोमं मन्यते पपिवान्यत्संपिंषन्त्योषधिम्।
सोमं यं ब्रह्माणो विदुर्न तस्याश्नाति कश्चन ॥३॥

सोमलता आदि औषधि पेल्दा मुखले पिउन योग्य मान्यता प्राप्त सोम बन्छ। ब्रह्मनिष्ठ ज्ञानीले जानेको सोम कुनै पनि व्यक्तिका मुखले पिउने सक्ने खालको हुँदैन।

आच्छद्विधानैर्गुपितो बार्हतैः सोम रक्षितः।
ग्राव्णामिच्छृण्वन्तिष्ठसि न ते अश्नाति पार्थिवः ॥४॥

हे दिव्य सोम ! तिमी बृहती विद्याका जानकारले जानेका र गोप्य विधिले सुरक्षित छौ। तिमी ग्रावाको ध्वनि सुन्दछौ। तिमीलाई पृथ्वीका प्राणीले सेवन गर्न सक्दैनन्।

यत्त्वा देवा प्रपिबन्ति तत आ प्यायसे पुनः।
वायुः सोमस्य रक्षिता समानां मास आकृतिः ॥५॥

हे सोमदेव ! मानिसले औषधिका रूपमा तिमीलाई ग्रहण गरेर बारम्बार तिम्रो सेवन गर्दछन्। महिनाले वर्षलाई सुरक्षित गरेझैं वायुदेव सोमलाई सुरक्षा गर्दछन्।

रैभ्यासीदनुदेयी नाराशंसी न्योचनी।
सूर्याया भद्रमिद्वासो गाथयैति परिष्कृतम् ॥६॥

सूर्यकी कन्याको पाणिग्रहणका समयमा रैभी नामका ऋचा उनका सखीजस्ता भए। नाराशंसी नामका ऋचा तिनका सेविका बनेका थिए। सूर्याको पहिरन अति शोभायमान थियो, कल्याणकारी गाथामन्त्र आदि विशेष रूपमा परिष्कृत थिए।

चित्तिरा उपबर्हणं चक्षुरा अभ्यञ्जनम्।
द्यौर्भूमिः कोश आसीद्यदयात्सूर्या पतिम् ॥७॥

सूर्यपुत्री पतिघरमा जानका लागि प्रस्थान गर्दा श्रेष्ठ विचार उनको आच्छादन र आँखाका अञ्जन पनि बनेका थिए। द्युलोक र पृथ्वी नै उनका खरखजाना भए।

स्तोमा आसन्प्रतिधयः कुरीरं छन्द ओपशः।
सूर्याया अश्विना वराग्निरासीत्पुरोगवः ॥८॥

स्तवन नै सूर्याका रथका दण्ड थिए, कुरीर नामको छन्द रथको भित्री भाग थियो। सूर्याका वर अश्विनीकुमार थिए र अग्नि अगाडि लागेका दूतका रूपमा थिए।

सोमो वधूयुरभवदश्विनास्तामुभा वरा।
सूर्यां यत्पत्ये शंसन्तीं मनसा सवितादददात् ॥९॥

सूर्यकी पुत्री हृदयदेखि नै पतिको कामना गर्दै थिइन्। सूर्यले आफ्नी पुत्री सूर्या अश्विनीकुमारलाई दिने बेलामा सोम पनि उनीसित विवाह गर्न इच्छुक थिए, अश्विनीकुमार नै उनका वरका रूपमा स्वीकृत भए।

मनो अस्या अन आसीद् द्यौरासीदुत च्छदिः।
शुक्रावनड्वाहावास्तां यदयात्सूर्या गृहम् ॥१०॥

सूर्या आफ्ना पतिका घरमा जाँदा मन उनको रथ थियो र आकाश रथको छानो थियो। दुई शुक्रहरू उनको रथका वाहन थिए।

ऋक्सामाभ्यामभिहितौ गावौ ते सामनावितः।
श्रोत्रं ते चक्रे आस्तां दिवि पन्थाश्चराचरः ॥११॥

हे सूर्यादेवी ! ऋक् र साम स्तवन सुन्ने, धारण गर्ने, एकअर्कासित समानता भएका, दुई श्रोत्र तिम्रा मनरूपी रथका पाङ्ग्रा थिए। रथले हिंड्ने बाटो आकाश निश्चित भयो।

शुची ते चक्रे यात्या व्यानो अक्ष आहतः।
अनो मनस्मयं सूर्यारोहत्प्रयती पतिम् ॥१२॥

जाने बेलामा तिम्रा रथका दुवै पाङ्ग्रा पवित्र र उज्ज्वल भए। त्यस रथको धुरो वायु थिए। पतिगृहमा जान लागेकी सूर्या मनरूपी रथमा आरूढ भइन्।

सूर्याया वहतुः प्रागात्सविता यमवासृजत्।
अघासु हन्यन्ते गावोऽर्जुन्यो पर्युह्यते ॥१३॥

सूर्या पतिका घरमा जाँदा छोरीका मायाले सूर्यले दाइजोका रूपमा बर्साएको धनजति सबै पहिले नै पठाइएको थियो। मघा नक्षत्रमा विदाइका बेलामा दिएका गाई धपाइए र अर्जुनी वा पूर्वाफाल्गुनी र उत्तरफाल्गुनी नक्षत्रमा कन्यालाई पतिगृहमा पठाइयो।

यदश्विना पृच्छमानावयातं त्रिचक्रेण वहतुं सूर्यायाः।
विश्वे देवा अनु तद्वामजानन्पुत्रः पितरावव‍ृणीत पूषा ॥१४॥

हे अश्विनीकुमार हो ! तिमीहरू सूर्यासँग विवाहसम्बन्धी कुरो बुझ्न पुगेका बेला सबै देवताले समर्थन गरे र तिमीहरूका पुत्र पूषाले तिमीहरूलाई स्वीकार गरे।

यदयातं शुभस्पती वरेयं सूर्यामुप।
क्वैकं चक्रं वामासीत्क्व देष्ट्राय तस्थथुः ॥१५॥

हे शुभस्पति अश्विनीकुमार हो ! सूर्याले वरण गर्नका लागि जाँदा तिमीहरूका रथको एउटा पाङ्ग्रो कहाँ थियो ? मार्ग जान्ने जिज्ञासामा तिमीहरू कहाँ रहेका थियौ ?

द्वे ते चक्रे सूर्ये ब्रह्माण ऋतुथा विदुः।
अथैकं चक्रं यद्गुहा तदद्धातय इद्विदुः ॥१६॥

हे सूर्य ! तिम्रा रथका दुई पाङ्ग्रा ऋतुअनुसार गतिशील रूपमा चलेका छन् भन्ने कुरो ब्राह्मणले जानेका छन्। तेस्रो गोपनीय चक्रका विषयमा पनि विद्वान्हरू जान्दछन्।

सूर्यायै देवेभ्यो मित्राय वरुणाय च।
ये भूतस्य प्रचेतस इदं तेभ्योऽकरं नमः ॥१७॥

सूर्या, मित्र र वरुण आदि देवताहरू तथा सबै प्राणीका लागि उनी कल्याणकारी हितचिन्तक हुन्। हामी उनलाई प्रणाम गर्दछौं।

पूर्वापरं चरतो माययैतौ शिशू क्रीडन्तौ परि यातो अध्वरम्।
विश्वान्यन्यो भुवनाभिचष्ट ऋतूँरन्यो विदधज्जायते पुनः ॥१८॥

दुवै शिशु आफ्ना तेजले पूर्व र पश्चिममा विचरण गर्दछन्। दुवै क्रीडा गर्दै यज्ञमा पुग्दछन्। उनीहरू दुईमा एउटा सूर्यले सबै लोक हेर्दछन् र अर्का चन्द्रले ऋतु निर्धारण गर्छन्। त्यसैले यिनीहरू वारम्वार उदाउनेअस्ताउने गर्दछन्।

नवोनवो भवति जायमानोऽह्नां केतुरुषसामेत्यग्रम्।
भागं देवेभ्यो वि दधात्यायन्प्र चन्द्रमास्तिरते दीर्घमायुः ॥१९॥

चन्द्रदेव दिनहुँ उदाएर सधैं नवीनतम हुनछन्। दिनका सूचक सूर्यदेव प्रतिदिन नवीन रूपमा बिहान सबैका अगाडि आउँछन्। सूर्यदेव आएर देवतालाई यज्ञको हविर्भाग दिने व्यवस्था गर्दछन्। चन्द्रदेव आएर जीवनलाई आनन्द र चिरायु प्रदान गर्दछन्।

सुकिंशुकं शल्मलिं विश्वरूपं हिरण्यवर्णं सुवृतं सुचक्रम्।
आ रोह सूर्ये अमृतस्य लोकं स्योनं पत्ये वहतुं कृणुष्व ॥२०॥

हे सूर्यपुत्री ! तिमी आफ्ना पतिका घरतिर जाँदै सुन्दर प्रकाशयुक्त पलाशका वृक्षले बनेको र शाल्मली वृक्षका काठले बनाइएको विभिन्न रूपका सुनौला वर्णका, उत्तम र सुन्दर चक्र जडिएका रथमा आरुढ होऊ। तिमी पतिका लागि अमृतमय लोकलाई सुखदायी बनाऊ।

उदीर्ष्वातः पतिवती ह्येषा विश्वावसुं नमसा गीर्भिरीडे।
अन्यामिच्छ पितृषदं स ते भागो जनुषा तस्य विद्धि ॥२१॥

हे विश्वावसु ! यस ठाउँबाट उठ, किनभने यो कन्याको पाणिग्रहण भइसकेको छ। हामी नमस्कार र स्तोत्रले तिम्रो अर्चना गर्दछौं। पितृगृहमा रहेका अरू विवाहयोग्य कन्याको कामना गर। उनैले सौभाग्य प्रदान गर्नेछन्, भनाइको राम्रो अभिप्राय बुझ।

उदीर्ष्वातो विश्वावसो नमसेडामहे त्वा।
अन्यामिच्छ प्रफर्व्यं१ सं जायां पत्या सृज ॥२२॥

हे विश्ववसु ! यो स्थान छोडिदेऊ। हामी नमस्कारपूर्वक तिम्रो स्तुति गर्दछौं। तिमी अर्कै युवतीको कामना गर र त्यस स्त्रीलाई पतिसँग जान संयुक्त गराऊ।

अनृक्षरा ऋजवः सन्तु पन्था येभिः सखायो यन्ति नो वरेयम्।
समर्यमा सं भगो नो निनीयात्सं जास्पत्यं सुयममस्तु देवाः ॥२३॥

हे देवता हो ! बाटाहरू कष्टले रहित र सरल होऊन्। तिनैबाट हाम्रा मित्र कन्याका पिताका घरमा जाऊन्। अर्यमा र भगदेवले हामीलाई यहाँ सुविस्तासाथ ल्याऊन्। यी पतिपत्नी आदर्श दम्पती सिद्ध होऊन्।

प्र त्वा मुञ्चामि वरुणस्य पाशाद्येन त्वाबध्नात्सविता सुशेवः।
ऋतस्य योनौ सुकृतस्य लोकेऽरिष्टां त्वा सह पत्या दधामि ॥२४॥

हे कन्या ! तिमीलाई हामी वरुणका बन्धनबाट छुट्याइदिन्छौँ। सवितादेवले सेवाकार्यका लागि तिमीलाई बन्धनयुक्त गराएका थिए। सत्यको आधार र सत्कर्मको निवास भएका स्थानमा तिमीलाई अनिष्टरहित पतिका साथ विराजमान गराउँछौँ।

प्रेतो मुञ्चामि नामुतः सुबद्धाममुतस्करम्।
यथेयमिन्द्र मीढ्वः सुपुत्रा सुभगासति ॥२५॥

हे कन्या ! यस पिताका कुलबाट तिमीलाई मुक्त गर्दछौँ, तर पतिका कुलबाट होइन। पतिका कुलमा तिमीलाई राम्ररी आवद्ध गराउँछौँ। हे कामनावर्षक इन्द्रदेव ! यी वधू सुसन्तानले सम्पन्न र सौभाग्यवती रहून्।

पूषा त्वेतो नयतु हस्तगृह्याश्विना त्वा प्र वहतां रथेन।
गृहान्गच्छ गृहपत्नी यथासो वशिनी त्वं विदथमा वदासि ॥२६॥

पूषादेवले तिमीलाई यहाँबाट हात समातेर लैजाऊन्। अगाडि अश्विनीकुमारले रथमा बसाएर लैजाऊन्। तिमी आफ्ना पतिका घर प्रस्थान गर। त्यहाँ तिमी गृहस्वामिनी र सबैलाई आफ्नो नियन्त्रणमा राख्ने बन, विवेकपूर्ण वाणीको प्रयोग गर।

इह प्रियं प्रजया ते समृध्यतामस्मिन् गृहे गार्हपत्याय जागृहि।
एना पत्या तन्वं सं सृजस्वाधा जिव्री विदथमा वदाथः ॥२७॥

पतिका घरमा सुसन्तानले युक्त भएर तिम्रा स्नेहको वृद्धि होस् र त्यस घरमा तिमी गृहस्थधर्मको कर्तव्य निर्वाह गर्नका लागि सधैँ जागरुक होऊ। स्वामीसँग मिलेर बस। वृद्धाअवस्थामा तिमीहरू दुवै राम्रो उपदेश दिन सक्ने होओ।

नीललोहितं भवति कृत्यासक्तिर्व्यज्यते।
एधन्ते अस्या ज्ञातयः पतिर्बन्धेषु बध्यते ॥२८॥

रजोवतीको रातोनीलो वर्णको हुँदा उनमा कृत्याशक्ति अभिव्यक्त हुन्छ। उसै कृत्याको अनुसार तत्त्वको वृद्धि हुन्छ। त्यसका प्रभावले पति बन्धनमा बाँधिन्छन्।

परा देहि शामुल्यं ब्रह्मभ्यो वि भजा वसु।
कृत्यैषा पद्वती भूत्व्या जाया विशते पतिम् ॥२९॥

शामुल्यका रूपमा शरीरको मलविकार त्याग गर। ब्रह्मको विचार गर्ने ब्राह्मणलाई धन वा आवास प्रदान गर। यस्तै कृत्याशक्तिले जन्म प्रदान गर्ने जायाका रूपमा पतिका साथ सहगामिनी बन्दछन्।

अश्रीरा तनूर्भवति रुशती पापयामुया।
पतिर्यद्वध्वो वाससा स्वमङ्गमभिधित्सते ॥३०॥

उक्त कृत्याजन्य विकारका स्थितिमा स्त्री पीडादायक हुन्छन्। यस्ता स्थितिमा वधूसित संयुक्त हुनाले पतिको शरीर कान्तिरहित भएर रोग आदिले दूषित हुन्छ।

ये वध्वश्चन्द्रं वहतुं यक्ष्मा यन्ति जनादनु।
पुनस्तान्यज्ञिया देवा नयन्तु यत आगताः ॥३१॥

चन्द्रमाजस्तै सुन्दर वधूको रोग जन्मदाता मातापिताबाट स्वभावतः बारम्बार आउँछ। त्यस्तो रोग यजनीय देवताले पहिलेकै स्थानतिर फिर्ता गरिदिऊन्।

मा विदन्परिपन्थिनो य आसीदन्ति दम्पती।
सुगेभिर्दुर्गमतीतामप द्रान्त्वरातयः ॥३२॥

दम्पतीका निकट आउने रोगरूपी शत्रु नाश होऊन्। तिनीहरू सुगम मार्गबाट दुर्गम स्थानमा जाऊन्। शत्रु हामीबाट टाढा पुगून्।

सुमङ्गलीरियं वधूरिमां समेत पश्यत।
सौभाग्यमस्यै दत्त्वायाथास्तं वि परेतन॥३३॥

नौली दुलही मङ्गल चिह्नले सुसज्जित छन्। आशीर्वाद दिन आएका सबैले यिनको दर्शन गरून्। विवाहितालाई उत्तम सौभाग्यवती हुने शुभआशीर्वाद दिइसकेपछि सबै आआफ्ना घरमा जाऊन्।

तृष्टमेतत्कटुकमेतदपाष्ठवद्विषवन्नैतदत्तवे।
सूर्यां यो ब्रह्मा विद्यात्स इद्वाधूयमर्हति॥३४॥

स्थिति दोषपूर्ण, अग्रहणीय, परैबाट देख्न योग्य विषजस्तै घातक छ, व्यवहारयोग्य होइन। सूर्यालाई राम्ररी चिनेका मेधावी विद्वान् नै वधूसँग हितकारी सम्बन्ध स्थापित गर्न योग्य हुन्छन्।

आशसनं विशसनमथो अधिविकर्तनम्।
सूर्यायाः पश्य रूपाणि तानि ब्रह्मा तु शुन्धति॥३५॥

सूर्याको स्वरूप कस्तो छ, त्यो पनि हेरौं। यिनको वस्त्र कैयौं ठाउँमा च्यातिएको छ। कतै माझमा त कतै चारै तिरबाट उध्रिएको छ। सृष्टिको निर्माण गर्ने ब्रह्माले यसलाई सुन्दर बनाउन सक्छन्।

गृभ्णामि ते सौभगत्वाय हस्तं मया पत्या जरदिष्टिर्यथासः।
भगो अर्यमा सविता पुरन्धिर्मह्यं त्वादुर्गार्हपत्याय देवाः॥३६॥

हे वधू ! सौभाग्य वृद्धि गर्नका लागि म तिम्रो यो हात समाउँछु। मलाई पतिका रूपमा स्वीकार गरेर वृद्ध अवस्थासम्म साथै रहिदेऊ भन्ने मेरो प्रार्थना छ। भग, अर्यमा, सविता र पूषादेवले तिमीलाई मेरा निमित्त गृहस्थधर्म पालन गर्न प्रदान गरेका छन्।

तां पूषञ्छिवतमामेरयस्व यस्यां बीजं मनुष्याऽ वपन्ति।
या न ऊरू उशती विश्रयाते यस्यामुशन्तः प्रहराम शेपम्॥३७॥

हे पूषादेव ! तिमी त्यस कल्याणकारीलाई प्रेरित गर, जसमा मानिसले बीज स्थापना गर्न सकोस्। हामी मानिसप्रति उल्लसित हुँदै जो आफ्ना उरु भाग फैलाउँछिन् र जसका गर्भमा उत्साहपूर्वक बीज स्थापित गर्न सकिन्छ, उनैलाई प्रेरित गर।

तुभ्यमग्रे पर्यवहन्त्सूर्यां वहतुना सह।
पुनः पतिभ्यो जायां दा अग्ने प्रजया सह॥३८॥

हे अग्निदेव ! सबैभन्दा पहिलो दाइजोका रूपमा कन्या नै तिम्रा सामु लगिन्छ। तिमी पतिलाई श्रेष्ठ सुसन्तान प्रदान गर्ने स्त्री प्रदान गर र विवाहित दम्पतीलाई सुसन्ततिले सम्पन्न गराऊ।

पुनः पत्नीमग्निरदादायुषा सह वर्चसा।
दीर्घायुरस्या यः पतिर्जीवाति शरदः शतम्॥३९॥

अग्निले दीर्घायु, तेजस्वी र कान्तियुक्त पत्नी प्रदान गरे। यिनका पति सय वर्ष बाँचून्।

सोमः प्रथमो विविदे गन्धर्वो विविद उत्तरः।
तृतीयो अग्निष्टे पतिस्तुरीयस्ते मनुष्यजाः॥४०॥

हे सूर्या ! सोमले सर्वप्रथम पत्नीका रूपमा तिमीलाई प्राप्त गरे। त्यसपछि गन्धर्व तिम्रा पति भए। तिम्रो तेस्रो पति अग्निदेव हुन्। मानिसका वंशज तिम्रा चौथा पति हुन्।

सोमो ददद् गन्धर्वाय गन्धर्वो दददग्नये।
रयिं च पुत्रांश्चादादग्निर्मह्यमथो इमाम्॥४१॥

सोमले ती स्त्री गन्धर्वलाई दिए। गन्धर्वले अग्निलाई र अग्निले त्यसपछि ऐश्वर्य र नारीबाट उत्पन्न सन्तानसहित मलाई प्रदान गर्दछन्।

इहैव स्तं मा वि यौष्टं विश्वमायुर्व्यश्नुतम्।
क्रीडन्तौ पुत्रैर्नप्तृभिर्मोदमानौ स्वे गृहे॥४२॥

हे वर र वधू ! तिमीहरू यहीं बस। कहिल्यै पनि आपसमा छुट्टा नहोओ। पूरा जीवन विशेष रीतिले उपभोग गर। आफ्नो गृहस्थधर्म निर्वाह गर्दै पुत्रपौत्रादि सन्तानसँग आमोदप्रमोदपूर्वक जीवन निर्वाह गर।

आ नः प्रजां जनयतु प्रजापतिराजरसाय समनक्त्वर्यमा।
अदुर्मङ्गलीः पतिलोकमा विश शं नो भव द्विपदे शं चतुष्पदे॥४३॥

प्रजापति ब्रह्माले हामीलाई असल सन्तान प्रदान गरून्। अर्यमादेवले वृद्ध अवस्थासम्म हामीलाई

सँगसँगै राखून्। हे वधू ! तिमी मङ्गलमयी बनेर पतिका घरमा प्रवेश गर। तिमी हाम्रा सम्माननीय बन्धु र पशुका लागि मङ्गलकारिणी होऊ।

**अघोरचक्षुरपतिघ्न्येधि शिवा पशुभ्यः सुमनाः सुवर्चाः।**
**वीरसूर्देवकामा स्योना शं नो भव द्विपदे शं चतुष्पदे ॥४४॥**

हे वधू ! तिमी शान्तिदृष्टियुक्त र पतिका निमित दुःखनिवारक तथा मङ्गलमयी होऊ। तिमी पशुका लागि हितप्रद, सुविचारयुक्त, तेजस्वी, वीर जन्माउने र देवताको उपासना गर्ने भएर कल्याणकारिणी होऊ। हाम्रो परिवार र आफन्तसँगै उपयोगी पशुका लागि कल्याणकारिणी होऊ।

**इमां त्वमिन्द्र मीढ्वः सुपुत्रां सुभगां कृणु।**
**दशास्यां पुत्राना धेहि पतिमेकादशं कृधि ॥४५॥**

हे इन्द्रदेव ! तिमी यी स्त्रीलाई सुसन्ततियुक्त र सौभाग्यशाली बनाऊ। यिनलाई दस पुत्र भएकी बनाऊ र पतिसहित यी स्त्रीका एघार जनाको परिवारले युक्त गराऊ।

**सम्राज्ञी श्वशुरे भव सम्राज्ञी श्वश्रवां भव।**
**ननान्दरि सम्राज्ञी भव सम्राज्ञी अधि देवृषु ॥४६॥**

हे वधू ! तिमी सासु, ससुरा, नन्द र देवरका लागि महारानीजस्तै होऊ। तिमी सबैमाथि स्वामिनीजस्तै होऊ।

**समञ्जन्तु विश्वे देवाः समापो हृदयानि नौ।**
**सं मातरिश्वा सं धाता समु देष्ट्री दधातु नौ ॥४७॥**

सम्पूर्ण देवताले हामी दुईको हृदय संयुक्त गराऊन्। जल, वायु, धाता र सरस्वतीले हामी दुवैलाई परस्पर मेल गराऊन्।

## [सूक्त – ८६]

**ऋषि** – इन्द्र वृषाकपि इन्द्राणी। **देवता** – इन्द्र। **छन्द** – पंक्ति।

**वि हि सोतोरसृक्षत नेन्द्रं देवममंसत।**
**यत्रामदद्वृषाकपिरर्यः पुष्टेषु मत्सखा विश्वस्मादिन्द्र उत्तरः ॥१॥**

इन्द्रदेवले स्तोतालाई सोम पेल्न अथवा अन्य काममा प्रेरित गरेका थिए। उनीहरूले इन्द्रदेवको प्रार्थना गरेनन्। सोमरसले गरिने यज्ञमा आएर वृषाकपि सोमपान गरेर हर्षित भए। त्यस्ता यज्ञमा पनि इन्द्रदेव नै प्रमुख हुन्छन्।

**परा हीन्द्र धावसि वृषाकपेरति व्यथिः।**
**नो अह प्र विन्दस्यन्यत्र सोमपीतये विश्वस्मादिन्द्र उत्तरः ॥२॥**

हे इन्द्रदेव ! तिमी दिक्क भएर वृषाकपिका निकटमा गएका थियौ। तिमी सोमपान गर्नका लागि अन्य यज्ञमा जाँदैनौ। निश्चय नै इन्द्रदेव महान् छौ।

**किमयं त्वां वृषाकपिश्चकार हरितो मृगः।**
**यस्मा इरस्यसीदु न्व१र्यो वा पुष्टिमद्वसु विश्वस्मादिन्द्र उत्तरः ॥३॥**

हे इन्द्रदेव ! हरियो रङ्गका मृगजस्ता वृषाकपिले तिम्रो कस्तो हित गरेका छन् ? कुन हितका लागि तिमी उदार भएर उनलाई पुष्टिकर ऐश्वर्य प्रदान गर्दछौ र त्यो कस्तो खालको हित हो ? इन्द्रदेव वास्तवमा नै सर्वोत्तम छौ।

**यमिमं त्व वृषाकपिं प्रियमिन्द्राभिरक्षसि।**
**श्वा न्वस्य जम्भिषदपि कर्णे वराहयुर्विश्वस्मादिन्द्र उत्तरः ॥४॥**

हे इन्द्रदेव तिमी जुन प्रिय वृषाकपिलाई सुरक्षा गर्दछौ, बनेललाई आक्रमण गर्ने कुकुरले उनको कान टोकिदेओस्। इन्द्रदेव वास्तवमा महान् छौ।

**प्रिया तष्टानि मे कपिर्व्यक्ता व्यदूदुषत्।**
**शिरो न्वस्य राविषं न सुगं दुष्कृते भुवं विश्वस्मादिन्द्र उत्तरः ॥५॥**

मलाई सन्तुष्ट गराउने पदार्थ वृषाकपिले दूषित गरिदिए। मलाई यिनको टाउको छिनाइदिऊँजस्तो लागेको छ। यस्ता दुष्कर्ममा लाग्नेको म कहिल्यै हितैषि बन्नेछैनँ। इन्द्रदेव सबैभन्दा महान् छन्।

न मत्स्त्री सुभसत्तरा न सुयाशुतरा भुवत्।
न मत्प्रतिच्यवीयसी न सक्थ्युद्यमीयसी विश्वस्मादिन्द्र उत्तरः ॥६॥

मभन्दा बढी सौभाग्यशालिनी कुनै अर्को आइमाई छैन। न त मभन्दा सुखी नै कुनै छन् न मेरा भन्दा असल सन्तानले युक्त नै कुनै होली। पतिलाई सुख दिनमा मभन्दा सक्षम पनि सायद कुनै नहोलान्। इन्द्रदेव वास्तवमा महान् छन्।

उवे अम्ब सुलाभिके यथेवाङ्ग भविष्यति।
भसन्मे अम्ब सक्थि मे शिरो मे वीव हृष्यति विश्वस्मादिन्द्र उत्तरः ॥७॥

हे माता इन्द्राणी ! अहिले तिमी सुखको लाभ प्राप्त गर्दै छौ। तिम्रा शरीरका अङ्ग, जङ्घा, मस्तक आदि आवश्यकताअनुसार आआफ्नो स्वरूप धारण गर्न र कार्य गर्न सक्षम छन्। तिमी इन्द्रदेव पिताका लागि स्नेहको सुख दिने गर्दछ्यौ। इन्द्रदेव महान् छन्।

किं सुबाहो स्वङ्गुरे पृथुष्टो पृथुजाघने।
किं शूरपत्नि नस्त्वमभ्यमीषि वृषाकपिं विश्वस्मादिन्द्र उत्तरः ॥८॥

हे वीर इन्द्राणी ! तिमी श्रेष्ठ भुजा, सुन्दर औँला, असल केश र विशाल जङ्घा भएकी छ्यौ। किन वृषाकपिको रिस गर्दछ्यौ। इन्द्रदेव वास्तवमा महान्।

अवीरामिव मामयं शरारुरभि मन्यते।
उताहमस्मि वीरिणीन्द्रपत्नी मरुत्सखा विश्वस्मादिन्द्र उत्तर ॥९॥

मलाई यस घातक वृषाकपिले पति र पुत्रविनाकी जस्तै ठानेको छ, तर म इन्द्रकी पत्नी, पति र सन्तानयुक्त छु, मरुत्‌हरू हाम्रा सहायक छन्। इन्द्रदेव विश्वमा सर्वोत्तम छन्।

संहोत्रं स्म पुरा नारी समनं वाव गच्छति।
वेधा ऋतस्य वीरिणीन्द्रपत्नी महीयतेविश्वस्मादिन्द्र उत्तरः ॥१०॥

सत्यको विधानमा रहने, सत्यको अनुसन्धान गर्ने र पुत्रवती इन्द्रकी पत्नी इन्द्राणी यज्ञमा पहिले नै पुग्दछिन्। त्यसो भएकैले सबै ठाउँमा उनको स्तुति हुन्छ। मेरा पतिका रूपमा इन्द्रदेव महान् छन्।

इन्द्राणीमासु नारिषु सुभगामहमश्रवम्।
नह्यस्या अपरं चन जरसा मरते पतिर्विश्वस्मादिन्द्र उत्तरः ॥११॥

सबै स्त्रीमध्ये इन्द्राणीलाई म सर्वाधिक सौभाग्यशालिनी मान्दछु। अन्य स्त्रीका पतिझैँ इन्द्राणीका पति इन्द्रको बुढो भएर मृत्यु हुँदैन। वास्तवमा उनै इन्द्र सर्वोत्तम छन्।

नाहमिन्द्राणि रारण सख्युर्वृषाकपेर्ऋते।
यस्येदमप्यं हविः प्रियं देवेषु गच्छति विश्वस्मादिन्द्र उत्तरः ॥१२॥

हे इन्द्राणी ! हाम्रा मित्र मरुत्‌हरू वृषाकपिविना खुशी हुँदैनन्। वृषाकपिको अत्यन्त प्रिय द्रव्य नै देवताकहाँ पुग्दछ। इन्द्रदेव नै सर्वोत्तम छन्।

वृषाकपायि रेवति सुपुत्र आदु सुस्नुषे।
घसत्त इन्द्र उक्षणः प्रियः काचित्करं हविर्विश्वस्मादिन्द्र उत्तरः ॥१३॥

हे वृषाकपिका माता पत्नी हो ! तिमीहरू धन, असल पुत्र र सुन्दर पुत्रवधूले सम्पन्न छौ। तिमीहरूबाट अर्पित उक्षा नामको पोषक खाद्यान्न इन्द्रदेवले चाँडै सेवन गरुन्। प्रिय र सुखदायक हविष्यान्न उनले सेवन गरुन्। इन्द्रदेव वास्तवमै महान् छन्।

उक्ष्णो हि मे पञ्चदश साकं पचन्ति विंशतिम्।
उताहमद्मि पीव इदुभा कुक्षी पृणन्ति मे विश्वस्मादिन्द्र उत्तरः ॥१४॥

मेरा लागि शचीले पठाएका पन्ध्र वा बीस वटा उक्षा एकैसाथ तयार छन्। म त्यो सेवन गरेर बलियो हुन्छु। मेरा दुवै पाखुरामा बल भरिन्छ। विश्वमा इन्द्र नै सर्वश्रेष्ठ छन्।

वृषभो न तिग्मशृङ्गोऽन्तर्यूथेषु रोरुवत्।
मन्थस्त इन्द्र शं हृदे यं ते सुनोति भावयुर्विश्वस्मादिन्द्र उत्तरः ॥१५॥

तिखा सिङ भएको साँढे गाईका बथानमा पसेर डुक्रँदै रमाएझैँ हाम्रा माझमा तिमी रमाएर बस। तिम्रा मनको भावना हितकारी होस्। तिमीलाई मनैदेखि रुचाउने इन्द्राणीले तयार गर्ने सोमरस पनि कल्याणकारी होस्। विश्वमा इन्द्रदेव सर्वोत्तम छन्।

न सेशे यस्य रम्बतेऽन्तरा सक्थ्या३ कपृत।
सेदीशे यस्य रोमशं निषेदुषो विजृम्भते विश्वस्मादिन्द्र उत्तरः ॥१६॥

जसका दुई वटाको भारी थाम्ने अङ्गका बीचमा कुख्यात गराउने विकृति झुक्रिन्छ, त्यो शासन गर्न सक्ने हुँदैन। त्यो रोमकिरणबाट चुहिने सम्भावना हुँदा शासन गर्न समर्थ हुन्छ। वास्तवमा इन्द्रदेव नै सर्वश्रेष्ठ छन्।

न सेशे यस्य रोमशं निषेदुषो विजृम्भते।
सेदीशे यस्य रम्बतेऽन्तरा सक्थ्या३ कपृद्विश्वस्मादिन्द्र उत्तरः ॥१७॥

कुरूप विस्तार भएका धर्ती र आकाश दुवै धारकबीच अन्तरिक्षमा शब्द निकाल्छन् र उनैले शासन गर्दछन्। जसका बिग्रिएका अङ्गको विकार प्रकट हुन्छ, उसले शासन गर्दैन। इन्द्रदेव नै सर्वश्रेष्ठ छन्।

अयमिन्द्र वृषाकपिः परस्वन्तं हतं विदत्।
असिं सूनां नवं चरुमादेधस्यान आचितं विश्वस्मादिन्द्र उत्तरः ॥१८॥

हे इन्द्रदेव ! वृषाकपिले टाढा रहेको दुर्लभ वस्तु पनि प्राप्त गरुन्। यो खड्ग, चरु र काठदाउराले भरिएको गाडा ग्रहण गर। इन्द्रदेव वास्तवमै सर्वोत्तम छन्।

अयमेमि विचाकशद्विचिन्वन्दासमार्यम्।
पिबामि पाकसुत्वनोऽभि धीरमचाकशं विश्वस्मादिन्द्र उत्तरः ॥१९॥

म इन्द्र यजमानको निरीक्षण गर्दै, शत्रु पर हटाउँदै र आर्यको खोजी गर्दै यज्ञमा उपस्थित हुने गरेको छु। सोम पेलेर तयार गर्ने र हविष्यान्न तयार गर्नेले दिएको सोम सेवन गर्छु। उचित किसिमले बुद्धिमान् याजकको रक्षा गर्दछु। इन्द्रदेव नै सर्वश्रेष्ठ छन्।

धन्व च यत्कृन्तत्रं च कति स्वित्ता वि योजना।
नेदीयसो वृषाकपेऽस्तमेहि गृहाँ उप विश्वस्मादिन्द्र उत्तरः ॥२०॥

पानीविनाको मरुस्थल र फाँड्नै पर्ने अनावश्यक जङ्गलसमेत आफैँ उब्जने ठाउँका बीचमा कति अन्तर छ ? त्यसो हुँदा दुवैलाई सह्यार्नका लागि हे वृषाकपि ! नजिकै रहेका हाम्रा घरमा तिमी बस्ने गर। इन्द्रदेव सर्वश्रेष्ठ छन्।

पुनरेहि वृषाकपे सुविता कल्पयावहै।
य एष स्वप्ननंशनोऽस्तमेषि पथा पुनर्विश्वस्मादिन्द्र उत्तरः ॥२१॥

हे वृषाकपि ! तिमी फेरि फर्केर आऊ। तिम्रा लागि हामी सुखदायी श्रेष्ठ कर्म सम्पन्न गर्दछौँ। तिमी निद्रा हटाएर स्वप्न नाश गराउने सूर्यजस्तै भएर सुगम मार्गबाट फेरि हाम्रै घरमा आऊ। इन्द्रदेव सर्वोत्तम छन्।

यदुदञ्चो वृषाकपे गृहमिन्द्राजगन्तन।
क्व१ स्य पुल्वघो मृगः कमगञ्जनयोपनो विश्वस्मादिन्द्र उत्तरः ॥२२॥

हे वृषाकपि र इन्द्रदेव ! माथि घुमिसकेर तिमीहरू हाम्रा घरभित्र पस। धेरै किसिमको भोग गर्ने र दुनियाँलाई सुख दिने तिमी घुमन्तेजस्तो भएर कहाँ गएका थियौ ? वास्तवमा इन्द्रदेव सर्वश्रेष्ठ छन्।

पर्शुर्ह नाम मानवी साकं ससूव विंशतिम्।
भद्रं भल त्यस्या अभूद्यस्या उदरमामयद्विश्वस्मादिन्द्र उत्तरः ॥२३॥

मनुकी पुत्रीको नाम पर्शु वा स्पर्शा हो। तिनले एकै पटक बीस वटा पुत्र जन्माएकी थिइन्। पर्शुको विशाल पेटको सधैँ भलो होस्। इन्द्रदेव नै वास्तवमा महान् छन्।

[सूक्त - ८७]

ऋषि - पायु भारद्वाज। देवता - रक्षोहा अग्नि। छन्द - त्रिष्टुप् अनुष्टुप्।

रक्षोहणं वाजिनमा जिघर्मि मित्रं प्रथिष्ठमुप यामि शर्म।
शिशानो अग्निः क्रतुभिः समिद्धः स नो दिवा स रिषः पातु नक्तम् ॥१॥

राक्षसविध्वंसक, बलवान्, याजकका मित्र र प्रतिष्ठित अग्निलाई हामी घिउले प्रज्वलित गराउँदै अत्यन्त सुखको अनुभव गर्दछौँ। यी अग्निदेव आफ्नो ज्वाला तेजस्वी गराउँदै यज्ञकर्ता यजमानद्वारा प्रदीप्त हुन्छन्। यिनै अग्निदेवले हिंसक राक्षसबाट हामीलाई रातदिन रक्षा गरुन्।

**अयोदंष्ट्रो अर्चिषा यातुधानानुप स्पृश जातवेदः समिद्धः।**
**आ जिह्वया मूरदेवान्रभस्व क्रव्यादो वृक्त्व्यपि धत्स्वासन् ॥२॥**

हे ज्ञानस्वरूप अग्निदेव ! तिमी अत्यन्त तेजस्वी र फलामका दाँत भएजस्तै छौ। त्यस्तै भएर आफ्ना ज्वालारूपी जिह्वाले हिंसक राक्षस नष्ट गर। मांसभक्षी राक्षसलाई काटेर आफ्ना ज्वालारूपी मुखमा हाल।

**उभोभयाविन्नुप धेहि दंष्ट्रा हिंस्रः शिशानोऽवरं परं च।**
**उतान्तरिक्षे परि याहि राजञ्जम्भैः सं धेह्यभि यातुधानान् ॥३॥**

हे अग्निदेव ! आफ्ना दाँत तिखा बनाऊ। असुरलाई ती दाँत गाडिदेऊ। दुई किसिमले राक्षस संहार गर र परसम्मका प्रजाको रक्षा गर। हे दीप्तिमान्, बलशाली अग्निदेव ! तिमी अन्तरिक्षमा रहेका असुरनजिकै जाऊ। दुष्ट असुरलाई आफ्ना दाह्राले चपाऊ।

**यज्ञैरिषूः संनममानो अग्ने वाचा शल्याँ अशनिभिर्दिहानः।**
**ताभिर्विध्य हृदये यातुधानान् प्रतीचो बाहून्प्रति भङ्ध्येषाम् ॥४॥**

हे अग्निदेव ! तिमी सामर्थ्यवर्द्धक यज्ञ र हाम्रा प्रार्थनाले सन्तुष्ट हुँदै बाणले निसाना लगाएर्भैं वज्रका अघिल्ला भागले असुरको मुटु छेडिदेऊ। त्यसपछि युद्ध गर्नका लागि कस्सिएका तिनका साथीका पनि हातपाखुरा भाँचिदेऊ।

**अग्ने त्वचं यातुधानस्य भिन्धि हिंस्राशनिर्हरसा हन्त्वेनम्।**
**प्र पर्वाणि जातवेदः शृणीहि क्रव्यात्क्रविष्णुर्वि चिनोतु वृक्णम् ॥५॥**

हे सर्वज्ञ अग्निदेव ! तिमी असुरको छाला काडिदेऊ। तिनलाई तिम्रा हिंसक अस्त्रका तेजले नष्ट गराऊ। असुरलाई अङ्गभङ्ग गराइदेऊ। असुरका टुक्रै टुक्रा भएका अङ्ग मांसाहारी ब्वाँसा आदि पशुलाई खाऊन्।

**यत्रेदानीं पश्यसि जातवेदस्तिष्ठन्तमग्न उत वा चरन्तम्।**
**यद्वान्तरिक्षे पथिभिः पतन्तं तमस्ता विध्य शर्वा शिशानः ॥६॥**

हे ज्ञानवान् र बलशाली अग्निदेव ! राक्षस उभिएका बेला, यताउति हिँडेका बेला, आकाशमा छँदा वा मार्गमा वा जहाँसुकै तिरको निसाना लगाउँदै तिमी तिखो बाण हानेर संहार गरिदेऊ।

**उतालब्धं स्पृणुहि जातवेद आलेभानादृष्टिभिर्यातुधानात्।**
**अग्ने पूर्वो नि जहि शोशुचान आमादः क्ष्विङ्कास्तमदन्त्वेनीः ॥७॥**

हे ज्ञानी अग्निदेव ! आक्रमणकारी असुरका हातले सताइएका यजमानलाई तिमी ऋष्टि नामको दुईतर्फ धार हुने खड्गले रक्षा गर। सबैभन्दा पहिले तिमी प्रदीप्त भएर काँचो मासु खाने राक्षसको संहार गर। आवाज निकाल्दै तीव्र गतिमा उड्ने चराले यी राक्षसलाई खाऊन्।

**इह प्र ब्रूहि यतमः सो अग्ने यो यातुधानो य इदं कृणोति।**
**तमा रभस्व समिधा यविष्ठ नृचक्षसश्चक्षुषे रन्धयैनम् ॥८॥**

हे युवा अग्निदेव ! यो यज्ञ विध्वंस गर्ने राक्षस कुन हो ? हामीलाई भन। समिधाले दन्किएर तिमी त्यसलाई संहार गर। मानिसमाथि तिम्रो कृपापूर्ण दृष्टि रहन्छ। त्यसै कल्याणकारी दृष्टिभित्रका आफ्ना तेजले असुरको विनाश गर।

**तीक्ष्णेनाग्ने चक्षुषा रक्ष यज्ञं प्राञ्चं वसुभ्यः प्र णय प्रचेतः।**
**हिंस्रं रक्षांस्यभि शोशुचानं मा त्वा दभन्यातुधाना नृचक्षः ॥९॥**

हे अग्निदेव ! तिमी आफ्नो मधुर तेजले हाम्रा यज्ञको सुरक्षा गर। हे श्रेष्ठ ज्ञानले सम्पन्न अग्निदेव ! यस सर्वोत्तम यज्ञलाई तिमी धनले सम्पन्न गराऊ। हे मानिसको हेरविचार गर्ने अग्निदेव ! तिमी असुरका संहारक र अति प्रज्वलित छौ। दुष्ट असुरताले तिम्रो विनाश नगरोस्।

**नृचक्षा रक्षः परि पश्य विक्षु तस्य त्रीणि प्रति शृणीह्यग्रा।**
**तस्याग्ने पृष्टीर्हरसा शृणीहि त्रेधा मूलं यातुधानस्य वृश्च ॥१०॥**

हे मानिसको हेरविचार गर्ने अग्निदेव ! मानिसका घातक असुरलाई पनि विचार गर। त्यस राक्षसका अघिल्ला तीन वटा टाउका छिनाऊ। उसका नजिकै रहेका राक्षसलाई पनि चाँडै समाप्त गर। यसै गरी तीन तिरबाट राक्षसको जरै मासिदेऊ।

त्रिर्यातुधानः प्रसितिं त एत्वृतं यो अग्ने अनृतेन हन्ति।
तमर्चिषा स्फूर्जयञ्जातवेदः समक्षमेनं गृणते नि वृङ्धि ॥११॥

हे ज्ञानले युक्त अग्निदेव ! तिम्रा ज्वालामा फोसिन राक्षस तीन पटक आऊन्। सत्यलाई असत्य वाणीले नष्ट गराउने राक्षसलाई आफ्ना तेजले खरानी बनाऊ। तिनलाई स्तोताका अगाडि नै विनष्ट पारिदेऊ।

तदग्ने चक्षुः प्रति धेहि रेभे शफारुजं येन पश्यसि यातुधानम्।
अथर्ववज्ज्योतिषा दैव्येन सत्यं धूर्वन्तमचितं न्योष ॥१२॥

हे ज्ञानसम्पन्न, बलशाली अग्निदेव ! गर्जन गर्ने अहङ्कारी असुरमाथि त्यस्तो तेज फ्याँक, जसको प्रकाशमा तिमी खुरजस्ता नङले ऋषिलाई दुःख दिने असुर देख्न सक्दछौ। सत्यलाई असत्यले छोप्न खोज्ने अज्ञानी असुरलाई आफ्ना तेजस्विताले अथर्वा ऋषिले जस्तै गरी भस्म गराइदेऊ।

यदग्ने अद्य मिथुना शपातो यद्वाचस्तृष्टं जनयन्त रेभाः।
मन्योर्मनसः शरव्या३ जायते या तया विध्य हृदये यातुधानान् ॥१३॥

हे अग्निदेव ! आज सबै स्त्रीपुरुष आपसी झगडा गर्दछन् र स्तोताहरू आपसमा मुख छोडेर बाझ्दै छन्। यस्ता वेलामा रिसका झोंकले छोडिएको बाणले राक्षसको हृदय प्वाल पारिदेऊ।

परा शृणीहि तपसा यातुधानान्पराग्ने रक्षो हरसा शृणीहि।
परार्चिषा मूरदेवाञ्छृणीहि परासुतृपो अभि शोशुचानः ॥१४॥

हे अग्निदेव ! असुरलाई तिमी आफ्ना तेजले भस्म गराऊ। तिनलाई आफ्ना तपशक्तिले विनाश गर। हिंस्रक असुरलाई आफ्ना तिखा ज्वालाले नष्ट र। अति ज्वलनशील अवस्थामा मानिसको प्राण हरण गर्ने असुरलाई भस्म गराइदेऊ।

पराद्य देवा वृजिनं शृणन्तु प्रत्यगेनं शपथा यन्तु तृष्टाः।
वाचास्तेनं शरव ऋच्छन्तु मर्मन्विश्वस्यैतु प्रसितिं यातुधानः ॥१५॥

अग्नि आदि देवताले प्राणघाती असुर विनाश गरुन्। असुरलाई हाम्रो सराप लागोस्। असत्ती राक्षसका मर्ममा बाण पसून्। सर्वव्यापक अग्निदेवका बन्धनले असुर मासोस्।

यः पौरुषेयेण क्रविषा समङ्क्ते यो अश्व्येन पशुना यातुधानः।
यो अघ्न्याया भरति क्षीरमग्ने तेषां शीर्षाणि हरसापि वृश्च ॥१६॥

हे अग्निदेव ! मान्छेका मासुले भुँडी भर्दा रमाउने, अश्व आदि पशुको मासु भेला पार्ने र हिंसारहित सोझा गाईको दुध चोर्ने दुष्ट राक्षसको मुन्टो आफ्ना शक्तिले छिनाइदेऊ।

संवत्सरीणं पय उस्रियायास्तस्य माशीद्यातुधानो नृचक्षः।
पीयूषमग्ने यतमस्तितृप्सात्तं प्रत्यञ्चमर्चिषा विध्य मर्मन् ॥१७॥

हे मानिसको विचार पुऱ्याउने अग्निदेव ! वर्षभरिमा जम्मा हुने गाईको दुधजति दुष्ट राक्षसले पान गर्न नसकून्। यो अमृतजस्तो दुध खाने विचार गर्ने राक्षस तिम्रा छेउमा आउनेबित्तिकै आफ्ना ज्वालारूपी तेजले तिमी छिन्नभिन्न गराइदेऊ।

विषं गवां यातुधानाः पिबन्त्वा वृश्च्यन्तामदितये दुरेवाः।
परैनान्देवः सविता ददातु परा भागमोषधीनां जयन्ताम् ॥१८॥

राक्षसी शक्तिले गाईको दुध खानेबित्तिकै त्यो दुध विषसरि होस्। देवमाता अदितिको सन्तुष्टिका लागि राक्षसलाई ज्वालारूपी अस्त्रले काटिदेऊ। सवितादेवले राक्षसलाई हिंस्रक जन्तुका माझमा हालिदिऊन्। यिनलाई खानयोग्य औषधि प्राप्त नहोस्।

सनादग्ने मृणसि यातुधानान्न त्वा रक्षांसि पृतनासु जिग्युः।
अनु दह सहमूरान्क्रव्यादो मा ते हेत्या मुक्षत दैव्यायाः ॥१९॥

हे ज्ञानवान्, बलशाली अग्निदेव ! सधैं तिमी राक्षसलाई दल्दै आएका छौ। तिनलाई युद्धमा परास्त गराएका छौ। क्रूर प्रकृतिका, अभक्ष्य आहार खाने दुष्टलाई तिमी नाश गर। तिम्रो तेजबाट तिनीहरू जोगिन नसकून्।

त्वं नो अग्ने अधरादुदक्तात्त्वं पश्चादुत रक्षा पुरस्तात्।
प्रति ते ते अजरासस्तपिष्ठा अघशंसं शोशुचतो दहन्तु ॥२०॥

हे अग्निदेव ! हामीलाई तिमी पूर्व, पश्चिम, उत्तर, दक्षिण चारै तिरबाट सुरक्षित गर। तिम्रो अति उज्ज्वल, अविनाशी र अत्यन्त रापिलो ज्वालाले दुष्कर्मी राक्षस डढाओस्।

**पश्चात्पुरस्तादधरादुदक्तात्कविः काव्येन परि पाहि राजन्।**
**सखे सखायमजरो जरिम्णेऽग्ने मर्ताँ अमर्त्यस्त्वं नः ॥२१॥**

हे दीप्तिसम्पन्न क्रान्तदर्शी अग्निदेव ! आफ्ना दृष्टिका कुशलताले उत्तर, दक्षिण, पूर्व र पश्चिम चारै तिरबाट हाम्रो रक्षा राम्ररी गर। हे जीर्णतारहित मित्र अग्निदेव ! हामी तिम्रा मित्र हुनाले कृपादृष्टिले दीर्घजीवी बनौँ। तिमी अविनाशी हौ, हामी मरणशील मानिसलाई चिरञ्जीवी बनाऊ।

**परि त्वाग्ने पुरं वयं विप्रं सहस्य धीमहि।**
**धृषद्वर्णं दिवेदिवे हन्तारं भङ्गुरावताम् ॥२२॥**

हे शक्तिशाली अग्निदेव ! तिमी पूर्णता प्रदान गर्न जान्ने, सङ्घर्षशील असुरलाई सधैँ संहार गर्न सक्दछौ। हामी तिम्रो गुण पाउनका लागि ध्यान गर्दछौँ।

**विषेण भङ्गुरावतः प्रति ष्म रक्षसो दह।**
**अग्ने तिग्मेन शोचिषा तपुरग्राभिर्ऋष्टिभिः ॥२३॥**

विध्वंसक कर्मतिर लागेका राक्षसलाई तिमी आफ्ना विस्तृत, तीक्ष्ण तेजले जलाइदेऊ र तातिएको दुईतिर धार हुने ऋष्टि नामका अस्त्रले तिनलाई नष्ट गराऊ।

**प्रत्यग्ने मिथुना दह यातुधाना किमीदिना।**
**सं त्वा शिशामि जागृह्यदब्धं विप्र मन्मभिः ॥२४॥**

हे बलशाली अग्निदेव ! स्त्रीपुरुषका बीचमा कहाँ के छ भन्ने कुरो हेर्दै र सुनाउँदै हिँड्ने गरेका राक्षसलाई भस्म गराऊ। हे ज्ञानले सम्पन्न अग्निदेव ! तिमी अदम्य छौ। तिमीलाई हामी सधैँ जागृत रहनका लागि स्तुति गर्दछौँ।

**प्रत्यग्ने हरसा हरः शृणीहि विश्वतः प्रति।**
**यातुधानस्य रक्षसो बलं वि रुज वीर्यम् ॥२५॥**

आफ्ना तेजले आततायी असुर नष्ट गर्ने हे अग्निदेव ! यी असुरको बल र पराक्रम तिमी पूरै विनाश गरिदेऊ।

## [सूक्त – ८८]

**ऋषि** – मूर्धन्वान् आङ्गिरस वामदेव्य। **देवता** – सूर्य वैश्वानर। **छन्द** – त्रिष्टुप्।

**हविष्पान्तमजरं स्वर्विदि दिविस्पृश्याहुतं जुष्टमग्नौ।**
**तस्य भर्मणे भुवनाय देवा धर्मणे कं स्वधया पप्रथन्त ॥१॥**

पोषण प्राप्तिका लागि पान गर्न योग्य, अविनाशी र देवताद्वारा सेवन गरिने सोमरस दिव्यलोक छुन पुग्ने, स्वर्गका विषयमा जानेका अग्निदेवका निम्ति समर्पित छ। त्यही सोमरस पोषणयुक्त ढङ्गले उत्पादन र धारण गर्नका लागि देवताले सुखप्रद अग्निलाई संवर्द्धित गराए।

**गीर्णं भुवनं तमसापगूळ्हमाविः स्वरभवज्जाते अग्नौ।**
**तस्य देवाः पृथिवी द्यौरुतापोऽरणयन्नोषधीः सख्ये अस्य ॥२॥**

सम्पूर्ण भुवन अन्धकारग्रस्त भएर हामी अँध्यारोले छोपिँदा अग्नि आविष्कार भए र सम्पूर्ण विश्व फेरि स्पष्ट रूपमा प्रकट भयो। जगत्लाई विलय गराउने यो महिमाशाली अग्निदेवको मित्रता इन्द्र आदि देवता, पृथिवी, आकाश, जल, अन्तरिक्ष र ओषधिमा रमाएको हुन्छ।

**देवेभिर्न्विषितो यज्ञियेभिरग्निं स्तोषाण्यजरं बृहन्तम्।**
**सो भानुना पृथिवीं द्यामुतेमामाततान रोदसी अन्तरिक्षम् ॥३॥**

यज्ञीय प्रक्रियाका सञ्चालक देवताले हामीलाई प्रेरणा प्रदान गरेका छन्। हामी उनै अविनाशी र विस्तृत अग्निदेवलाई प्रार्थना गर्दछौँ। उनै अग्निका तेजले द्यावापृथिवी र अन्तरिक्ष विस्तृत गराउँछ।

**यो होतासीत्प्रथमो देवजुष्टो यं समाञ्जन्नाज्येना वृणानाः।**
**स पतत्रीत्वरं स्था जगद्यच्छ्वात्रमग्निरकृणोज्जातवेदाः ॥४॥**

वैश्वानर अग्निदेवले देवताबाट सेवा प्राप्त गर्दै सबैभन्दा पहिलो होता हुने अवसर पाए। उनलाई वरणकर्ता देवता र याजकले राम्ररी प्रज्वलित गराउँछन्। उनै अग्निदेवले उड्ने चरा, गतिशील सर्पआदि र जगत्का समस्त स्थावरजङ्गम चाँडै उत्पन्न गरेका हुन्।

यज्जातवेदो भुवनस्य मूर्धन्नतिष्ठो अग्ने सह रोचनेन।
तं त्वाहेम मतिभिर्गीर्भिरुक्थैः स यज्ञियो अभवो रोदसिप्राः ॥५॥

हे ज्ञानी अग्निदेव ! सम्पूर्ण विश्वका सबैभन्दा उच्च स्थानमा तिमी रहन्छौ। तिम्रा मनको विचार र तिमीलाई हामी स्तुति र सुन्दर गानले प्राप्त गर्दछौं। तिमी यज्ञीय क्रमले आकाश र पृथ्वी परिपूर्ण गराउँछौ।

मूर्धा भुवो भवति नक्तमग्निस्ततः सूर्यो जायते प्रातरुद्यन्।
मायामू तु यज्ञियानामेतामपो यत्तूर्णिश्चरति प्रजानन् ॥६॥

रात अथवा प्रलयकालका अन्धकारमा अग्निदेव यस संसारका सबै प्राणीका लागि शिर जोगाउने आश्रयका रूपमा रहन्छन्। यिनी बिहान अथवा सृष्टिकालमा सूर्यका रूपमा प्रकट हुन्छन्। यिनै अग्निदेवलाई यज्ञ सम्पन्न गर्ने देवताको माया भनिन्छ। उनी सर्वज्ञाता भएर शीघ्रताका साथ अन्तरिक्षमा विचरण गर्दछन्।

दृशेन्यो यो महिना समिद्धोऽरोचत दिवियोनिर्विभावा।
तस्मिन्नग्नौ सूक्तवाकेन देवा हविर्विश्व आजुहवुस्तनूपाः ॥७॥

अग्नि आफ्ना महिमाले सर्वदर्शनीय, प्रज्वलनशील, दिव्यलोकमा विराजमान, विशिष्ट रूपले तेजस्वी भएर सुशोभित हुन्छन्। अग्निदेवलाई शरीरका रक्षक देवताले सूक्त पाठ गर्दै हविष्यान्नको आहुति समर्पित गरे।

सूक्तवाकं प्रथममादिदग्निमादिद्धविरजनयन्त देवाः।
स एषां यज्ञो अभवत्तनूपास्तं द्यौर्वेद तं पृथिवी तमापः ॥८॥

सर्वप्रथम देवताले पहिलो वाक्यका रूपमा सूक्त बनाए। त्यसपछि अग्निदेवले उर्जाप्रवाह प्रकट गरे, अनि हविष्य बनाए। यसै गरी यो दिव्य यज्ञ सम्पन्न भयो। यस यज्ञले शरीरको संरक्षण हुन्छ। यसलाई द्युलोक, पृथ्वी र अन्तरिक्षले जानेका छन्।

यं देवासोऽजनयन्ताग्निं यस्मिन्नाजुहवुर्भुवनानि विश्वा।
सो अर्चिषा पृथिवीं द्यामुतेमामृजूयमानो अतपन्महित्वा ॥९॥

अग्नि देवशक्तिबाट उत्पन्न भए। अग्निमा सम्पूर्ण लोकले आआफ्ना आहुति समर्पित गर्दछन्। अग्निले सरल मार्गबाट पृथ्वी, द्युलोक र अन्तरिक्षलाई ताप प्रदान गरेका छन्।

स्तोमेन हि दिवि देवासो अग्निमजीजनञ्छक्तिभी रोदसिप्राम्।
तमू अकृण्वन् त्रेधा भुवे कं स ओषधीः पचति विश्वरूपाः १०॥

द्युलोक र पृथ्वी व्याप्त गराउने अग्निदेवलाई देवताले देवलोकमा स्तुति र प्रार्थनाले प्रकट गरे। सुखदायक अग्निलाई उनले पृथ्वी, अन्तरिक्ष र द्युलोक गरी तीन भावमा प्रस्तुत गरे। अग्निदेव पृथ्वीमा सर्वव्यापी औषधिलाई परिपक्व अवस्था प्रदान गर्दछन्।

यदेदेनमदधुर्यज्ञियासो दिवि देवाः सूर्यमादितेयम्।
यदा चरिष्णू मिथुनावभूतामादित्प्रापश्यन्भुवनानि विश्वा ॥११॥

देवताले यज्ञीय कार्यक्रममा अग्निदेवलाई आदित्य र सूर्यका रूपमा आकाशमा प्रतिष्ठित गराउँदा विचरणशील धनात्मक र ऋणात्मक गरी वैभवका दुई स्वरूप रचना भए। त्यसपछि मात्रै तिनले सारा संसार देखिने रूपमा रचना गरेका हुन्।

विश्वस्मा अग्निं भुवनाय देवा वैश्वानरं केतुमह्नामकृण्वन्।
आ यस्ततानोषसो विभातीरपो ऊर्णोति तमो अर्चिषा यन् ॥१२॥

अग्निदेव विशेष दीप्तिले युक्त उषाका निर्माता हुन् र गमनशील भएर आफ्नै तेजले अन्धकार समाप्त गर्दछन्। विश्वको कल्याण गर्ने अग्निदेवलाई सम्पूर्ण देवताले दिउँसोका लागि उज्यालो प्रदान गर्ने बनाए।

वैश्वानरं कवयो यज्ञियासोऽग्निं देवा अजनयन्नजुर्यम्।
नक्षत्रं प्रत्नममिनच्चरिष्णु यक्षस्याध्यक्षं तविषं बृहन्तम् ॥१३॥

क्रान्तदर्शी र यज्ञको विचार भएका देवताले अजर वैश्वानर अग्निदेव प्रकट गरे। अग्निदेव विस्तृत र महिमामय भएर अन्तरिक्षमा पहिलेदेखि विचरण गरेका नक्षत्रलाई देवताका अगाडि प्रभावहीन बनाइदिन्छन्।

वैश्वानरं विश्वहा दीदिवांसं मन्त्रैरग्निं कविमच्छा वदामः।
यो महिम्ना परिबभूवोर्वी उतावस्तादुत देवः परस्तात् ॥१४॥
सधैँका दीप्तिमान्, क्रान्तदर्शी र विश्वमङ्गलकारी अग्निदेवलाई हामी मन्त्रले प्रार्थना गर्दछौँ। अग्निदेव आफ्ना महत्त्वपूर्ण उपयोगिताले द्यावापृथिवी परिपूर्ण गराउँछन्। अग्निदेव माथि र तल गरी दुवै तिरबाट प्रकाशित हुँदै तात्दछन्।

द्वे स्रुती अशृणवं पितॄणामहं देवानामुत मर्त्यानाम्।
ताभ्यामिदं विश्वमेजत्समेति यदन्तरा पितरं मातरं च ॥१५॥
पितृ, देवता र मानिसका देवयान र पितृयान गरी दुवै मार्गसित हामी परिचित छौँ। यो जगत् मातापितारूपी द्यावापृथिवीका बीचमा प्रकट भएको छ। संसार अगाडि सर्दै ती दुवै लोकको मार्ग फेला पार्दछ।

द्वे समीची बिभृतश्चरन्तं शीर्षतो जातं मनसा विमृष्टम्।
स प्रत्यङ्विश्वा भुवनानि तस्थावप्रयुच्छन्तरणिर्भ्राजमानः ॥१६॥
एकापसमा सम्बन्धित भएर गतिशील रहेका द्यावापृथिवी, सूर्यबाट उत्पादित, टाउका माथिको स्थानमा विद्यमान, मनन गर्न योग्य स्तुतिले विशेष रूपमा शोधित भएपछि अग्निदेवलाई धारण गर्दछन्। सबैलाई तार्ने उनै देदीप्यमान अग्निदेव नियम भङ्ग नगरीकन आफ्ना कार्य गर्दै सम्पूर्ण लोकका अगाडि नै रहेका हुन्छन्।

यत्रा वदेते अवरः परश्च यज्ञन्योः कतरो नौ वि वेद।
आ शेकुरित्सधमादं सखायो नक्षन्त यज्ञं क इदं वि वोचत् ॥१७॥
तल्लो लोकमा व्याप्त भएका अग्नि र माथिल्लो लोकमा विचरण गर्ने अग्नि या वायुका बीचमा यज्ञका विषयमा हामी दुईमध्ये को विशेष रूपमा जान्ने भनेर विवाद हुन्छ। त्यस बेला मित्रसरिका ऋत्विक्हरू यज्ञ सम्पन्न गर्दछन्। उनीहरूको त्यस्तो विवाद टुङ्ग्याउन भने कोही सक्षम हुँदैन।

कत्यग्नयः कति सूर्यासः कत्युषासः कत्यु स्विदापः।
नोपस्पिजं वः पितरो वदामि पृच्छामि वः कवयो विद्मने कम् ॥१८॥
हे पितृ हो ! तिमीहरूसित प्रतिस्पर्धा गर्नका लागि प्रश्न सोध्न लागेका होइनौँ। ज्ञान प्राप्त गर्नका लागि सोध्दछौँ। अग्नि कति किसिमका हुन्छन् ? सूर्य कति छन् ? उषा कति हुन्छन् र जलदेवता कति किसिमका छन् ?

यावन्मात्रमुषसो न प्रतीकं सुपर्ण्योऽवसते मातरिश्वः।
तावद्दधात्युप यज्ञमायन्ब्राह्मणो होतुरवरो निषीदन् ॥१९॥
हे वायुदेव ! रात्रिहरू बिहानीको तेजरूपी मुखको घुम्टो नहटाउन्जेल ज्ञानीहरूमा तल रहने होताहरू यज्ञअग्निका नजिकै बसेर स्तोत्र गाउँदै तिनको उपासना गर्दछन्।

[सूक्त – ८९]

ऋषि – रेणु वैश्वामित्र। देवता – इन्द्र सोम देवता। छन्द – त्रिष्टुप्।

इन्द्रं स्तवा नृतमं यस्य मह्ना विबबाधे रोचना वि ज्मो अन्तान्।
आ यः पप्रौ चर्षणीधृद्वरोभिः प्र सिन्धुभ्यो रिरिचानो महित्वा ॥१॥
इन्द्रदेव आफ्ना महानताले प्रकाश पनि छेकिदिन्छन् र पृथ्वीको आन्तरिक भाग पनि ओगट्छन्। हे ऋत्विक् हो ! मानिसको पालनपोषण गर्न समुद्र भन्दा बढी समर्थ, विश्वको अन्धकारनाशक, तेजले द्युलोक र पृथ्वी व्याप्त गराउने इन्द्रदेवलाई स्तुति गर।

स सूर्यः पर्युरू वरांस्येन्द्रो ववृत्याद्रथ्येव चक्रा।
अतिष्ठन्तमपस्यं१न सर्गं कृष्णा तमांसि त्विष्या जघान ॥२॥
सामर्थ्यशाली इन्द्रदेव आफ्ना तेजले अनेकौँ लोकलाई सारथीले चक्र घुमाएझैँ चारैतिर घुमाउँछन्। निरन्तर गतिशील र सधैँ कर्ममा रहने अश्वजस्तै इन्द्रदेवका प्रखर तेजले यस सृष्टिका चारैतिर फैलिएको कालो अन्धकार विनाश गर्दछ।

समानमस्मा अनपावृदर्च क्ष्मया दिवो असमं ब्रह्म नव्यम्।
वि यः पृष्ठेव जनिमान्यर्य इन्द्रश्चिकाय न सखायमीषे ॥३॥
हे ऋत्विक् हो ! हामीसँगै भेला भएर उनै इन्द्रदेवका लागि पृथ्वी र आकाशमा अनुपम मानिएको

नयाँनौलो स्तोत्र उच्चारण गर। इन्द्रदेव यज्ञमा बताइएका पृष्ठ नामको पोषक स्तोत्र पाउन आशा गर्दछन्। उनी शत्रुको निरीक्षण र मित्रको संरक्षणका लागि पनि तयार भइरहेका हुन्छन्।

**इन्द्राय गिरो अनिशितसर्गा अपः प्रेरयं सगरस्य बुध्नात्।**
**यो अक्षेणेव चक्रिया शचीभिर्विष्वक्तस्तम्भ पृथिवीमुत द्याम् ॥४॥**

इन्द्रदेवता आफ्ना क्षमताले द्युलोक र पृथिवीलाई धुराले चक्रलाई सम्हालेझैं सम्हाल्दछन्। इन्द्रदेवका लागि उच्च स्वरले उच्चारण गरिने स्तुति अन्तरिक्षबाट जल प्रवाहित गर्नमा पनि सक्षम हुन्छ।

**आपान्तमन्युस्तृपलप्रभर्मा धुनिः शिमीवाञ्छरुमाँ ऋजीषी।**
**सोमो विश्वान्यतसा वनानि नार्वागिन्द्रं प्रतिमानानि देभुः ॥५॥**

तेज उत्पन्न गर्ने, शीघ्र अति वेगपूर्वक प्रहार गर्ने, पराक्रमले शत्रु थर्काउने, अनेकौं कर्म सम्पन्न गर्ने, अस्त्रशस्त्र धारण गर्ने, सरल र धर्मका मार्गमा प्रेरित गर्ने सोमदेव सम्पूर्ण विस्तृत वनमा व्याप्त भएर इन्द्रलाई बलियो बनाउँछन्। कुनै पनि उपमानले इन्द्रदेवको समानता गर्न सक्दैन।

**न यस्य द्यावापृथिवी न धन्व नान्तरिक्षं नाद्रयः सोमो अक्षाः।**
**यदस्य मन्युरधिनीयमानः शृणाति वीडु रुजति स्थिराणि ॥६॥**

द्युलोक, पृथिवी, अन्तरिक्ष र पर्वतले इन्द्रदेवको समानता गर्न सक्दैनन्। इन्द्रदेवका लागि सोमरस चुहुने गर्दछ। दुष्ट शत्रुमाथि उनको रिस बर्सदा दृढतापूर्वक तिनलाई उनले विनाश गर्दछन् र स्थिर पदार्थलाई पनि भत्काइदिन्छन्।

**जघान वृत्रं स्वधितिर्वनेव रुरोज पुरो अरदन्न सिन्धून्।**
**बिभेद गिरिं नवमिन्न कुम्भमा गा इन्द्रो अकृणुत स्वयुग्भिः ॥७॥**

बन्चराले वन काटेझैं इन्द्रदेवले असुरता विनाश गरे। शत्रुको सहर विनाश गरेर काँचो घैलोझैं मेघ भत्काए। सहयोगी मरुत्हरूसँगै इन्द्रदेवले हामीलाई जल प्रदान गरे।

**त्वं ह त्यदृणया इन्द्र धीरोऽसिर्न पर्व वृजिना शृणासि।**
**प्र ये मित्रस्य वरुणस्य धाम युजं न जना मिनन्ति मित्रम् ॥८॥**

हे इन्द्रदेव ! तिमी धैर्यशाली भएर स्तोतालाई ऋणबाट मुक्त गराउँछौ। खड्गले जेसुकैको गाँठो काटेझैं साधकको दुःख विनाश गर्दछौ। वरुण र मित्रका बन्धुत्वपूर्ण धारक कर्ममा बाधा हाल्ने अज्ञानी मानिसलाई इन्द्रदेवले विनाश गर्दछन्।

**प्र ये मित्रं प्रार्यमणं दुरेवाः प्र सङ्गिरः प्र वरुणं मिनन्ति।**
**न्यमित्रेषु वधमिन्द्र तुम्रं वृषन्वृषाणमरुषं शिशीहि ॥९॥**

हे रहर पूरा गराउने इन्द्रदेव ! मित्र, अर्यमा, प्रशंसनीय वरुणलाई पीडित गर्ने दुष्कर्मी शत्रु संहार गर्न आफ्नो वेगवान्, सामर्थ्यशाली र प्रदीप्त वज्र नामको अस्त्र धारण गर।

**इन्द्रो दिव इन्द्र ईशे पृथिव्या इन्द्रो अपामिन्द्र इत्पर्वतानाम्।**
**इन्द्रो वृधामिन्द्र इन्मेधिराणामिन्द्रः क्षेमे योगे हव्य इन्द्रः ॥१०॥**

द्युलोक, पृथ्वी, जल र पर्वत आदि सबैतिर इन्द्रकै आधिपत्य छ। अनुभवशील वृद्ध र ज्ञानी मानिसमाथि उनैको स्वामित्व छ। नयाँ पदार्थ पाउने र पाएको कुरो जोगाउनका लागि इन्द्रदेवको स्तुति गर्नुपर्दछ।

**प्राक्तुभ्य इन्द्रः प्र वृधो अहभ्यः प्रान्तरिक्षात्प्र समुद्रस्य धासेः।**
**प्र वातस्य प्रथसः प्र ज्मो अन्तात्प्र सिन्धुभ्यो रिरिचे प्र क्षितिभ्यः ॥११॥**

राति, दिउँसो, अन्तरिक्ष, जल धारण गरेको समुद्र, वायुको विस्तृत ठाउँ, पृथ्वीको सीमा, नदी र मानिस आदि सबैबाट इन्द्रदेवको शक्ति महिमाशाली भएको छ। इन्द्रदेवले सबैलाई जित्न सक्दछन्।

**प्र शोशुचत्या उषसो न केतुरसिन्वा ते वर्ततामिन्द्र हेतिः।**
**अश्मेव विध्य दिव आ सृजानस्तपिष्ठेन हेषसा द्रोघमित्रान् ॥१२॥**

हे इन्द्रदेव ! तिम्रो शत्रु हनन गर्ने अक्षय वज्रास्त्र, ज्योतिले सम्पन्न उषाको ध्वजाका किरणले एकै समान रूपमा शत्रु ध्वस्त पारोस्। तिमी सन्तापकारी, भयङ्कर गर्जनकारी, आकाशबाट बिजुलीझैं खस्ने वज्रले विरोधी शत्रु संहार गर।

अन्वह मासा अन्विद्वनान्यन्वोषधीरनु पर्वतासः।
अन्विन्द्रं रोदसी वावशाने अन्वापो अजिहत जायमानम् ॥१३॥

इन्द्रदेव प्रकट हुनासाथ मास, वन, औषधि र पर्वत उनका पछि लागेर हिँड्न थाल्दछन्। कान्तिमान् आकाश, पृथ्वी र जल पनि इन्द्रदेवकै पछि लाग्दछन्।

कर्हि स्वित्सा त इन्द्र चेत्यासदघस्य यद्भिनदो रक्ष एषत्।
मित्रक्रुवो यच्छसने न गावः पृथिव्या आपृगमुया शयन्ते ॥१४॥

हे इन्द्रदेव ! युद्ध गर्ने पापी राक्षसलाई तिमी प्रख्यात अस्त्रले नष्ट गर्दछौ। त्यो अस्त्र कहिले उत्पन्न होला ? त्यसबाट हितका विरोधी राक्षस, वधशालाका पशुजस्तै हुँदै मरेर धर्तीमा ढलेका होऊन्।

शत्रूयन्तो अभि ये नस्ततस्रे महि व्राधन्त ओगणास इन्द्र।
अन्धेनामित्रास्तमसा सचन्तां सुज्योतिषो अक्तवस्ताँ अभि ष्युः ॥१५॥

हे इन्द्रदेव ! शत्रुतापूर्वक दुःख दिनका लागि हामीलाई चारैतिरबाट छेक्ने असुर शत्रु अन्धकारमा खसून् र प्रकाशमयी रात्रि पनि तिनीहरूलाई अन्धकारपूर्ण नै लागोस्।

पुरूणि हि त्वा सवना जनानं ब्रह्माणि मन्दन्गृणतामृषीणाम्।
इमामाघोषन्नवसा सहूतिं तिरो विश्वाँ अर्चतो याह्यर्वाङ् ॥१६॥

हे इन्द्रदेव ! यजमानहरू तिम्रै लागि यज्ञ आदिको अनुष्ठान गर्दछन्। स्तोताले संयुक्त रूपले गर्ने प्रार्थनाले हामी पनि तिमीलाई हर्षित गराउँछौँ। त्यसो हुँदा प्रसन्न भएर तिमी हाम्रो संरक्षणका लागि नजिक आइदेऊ।

एवा ते वयमिन्द्र भुञ्जतीनां विद्याम सुमतीनां नवानाम्।
विद्याम वस्तोरवसा गृणन्तो विश्वामित्रा उत त इन्द्र नूनम् ॥१७॥

हे इन्द्रदेव ! कृपापूर्वक संरक्षण गर्ने हुनाले तिम्रै अनुग्रह हामीलाई उपलब्ध होस् भनेर हामी बारम्बार नयाँ स्तुति गर्दछौँ। हामी विश्वामित्रका वंशज निश्चित रूपमा तिम्रो अनुग्रहबाट असल दिन देख्न पाउँछौँ।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥१८॥

सङ्ग्राममा हामी अत्यन्त पवित्र, यजमानमाथि कृपा गर्ने, युद्ध रुचाउने शत्रु नाश गर्ने, सम्पूर्ण धनऐश्वर्यका विजेता र पुरुषहरूमा उत्तम इन्द्रदेवलाई अन्न प्राप्तिका लागि र संरक्षण गरुन् भनेर आह्वान गर्दछौँ।

[सूक्त - ९०]

ऋषि - नारायण। देवता - पुरुष। छन्द - अनुष्टुप् त्रिष्टुप्।

सहस्रशीर्षा पुरुषः सहस्राक्षः सहस्रपात्।
स भूमिं विश्वतो वृत्वात्यतिष्ठद्दशाङ्गुलम् ॥१॥

हजारौँ शिर, हजारौँ नेत्र, हजारौँ चरण भएका विराट् पुरुषले सारा ब्रह्माण्ड जितेर त्यसलाई दस औँलाले निर्माण गर्दै ओगटेका छन्।

पुरुष एवेदं सर्वं यद्भूतं यच्च भव्यम्।
उतामृतत्वस्येशानो यदन्नेनातिरोहति ॥२॥

निर्माण भइसकेको र निर्माण हुनुपर्ने सृष्टिको रूप उनै विराट् पुरुष हुन्। ती विराट् पुरुषका एक चरणमा सबै प्राणी अटेका छन् र तीन वटा चरण दिव्यलोकमा छन्।

एतावानस्य महिमातो ज्यायाँश्च पूरुषः।
पादोऽस्य विश्वा भूतानि त्रिपादस्यामृतं दिवि ॥३॥

यस संसारको विशालताभन्दा ठूला उनै विराट् पुरुष छन्। अमर आत्मा र अविनाशी जगत्का स्वामी पनि उनै विराट् पुरुष हुन्। अन्न खाएर बढ्नेहरूका स्वामी उनै हुन्।

त्रिपादूर्ध्व उदैत्पुरुषः पादोऽस्येहाभवत्पुनः।
ततो विष्वङ् व्यक्रामत्साशनानशने अभि ॥४॥

उपल्लो लोकमा तीन चरण हुने विराट् पुरुषको एक भाग यहाँ फेरि प्रकट भयो। अन्न खाने प्राणी र अन्न नखाने वनस्पति आदिमा उनै विराट् पुरुष व्याप्त रहेका छन्।

तस्माद्विराडजायत विराजो अधिपूरुषः।
स जातो अत्यरिच्यत पश्चाद्भूमिमथो पुरः ॥५॥

सृष्टिको रचना गर्ने परम पुरुष परमात्माबाट ती विराट् पुरुषको उत्पत्ति सृष्टिको मूल आधारतत्त्वका रूपमा भयो। त्यही विराट् मूल तत्त्व प्रकट भएपछि त्यसको विभाजन सुरु भयो। त्यसैबाट भूमि आदिको पिण्ड र प्राणीको उत्पत्ति भएको छ।

यत्पुरुषेण हविषा देवा यज्ञमतन्वत।
वसन्तो अस्यासीदाज्यं ग्रीष्म शरद्धविः ॥६॥

विराट् पुरुषले हवि निर्माण गरेपछि देवताले यज्ञरूपी सृष्टिको थालनी गर्दा वसन्त ऋतु घिउ र ग्रीष्म ऋतु समिधा र शरद् ऋतु हविष्यका रूपमा प्रकट भए।

तं यज्ञं बर्हिषि प्रौक्षन्पुरुषं जातमग्रतः।
तेन देवा अयजन्त साध्या ऋषयश्च ये ॥७॥

विशिष्ट प्राणप्रवाहरूपी त्यस यज्ञका साध्य बनेका देवता र ऋषिहरूले पहिले प्रकट भएका यज्ञपुरुषलाई नै यज्ञका काममा खटाएर यज्ञको कार्य सम्पन्न गरे।

तस्माद्यज्ञात्सर्वहुतः सम्भृतं पृषदाज्यम्।
पशूंस्तांश्चक्रे वायव्यानारण्यान् ग्राम्याश्च ये ॥८॥

सबै हवन गरेका यज्ञबाट सन्तुष्टिदायक पोषण तत्त्व उत्पन्न भयो। त्यसैबाट वायुमा गतिशीलता उत्पन्न भयो भने वन र गाउँमा रहने प्राणीको पनि उत्पत्ति भयो।

तस्माद्यज्ञात्सर्वहुत ऋचः सामानि जज्ञिरे।
छन्दांसि जज्ञिरे तस्माद्यजुस्तस्मादजायत ॥९॥

विराट् यज्ञ पुरुषबाट ऋग्वेद र सामवेदका गीत प्रकट भए। त्यहींबाट यजुर्वेद र अन्य वेदका ऋचा उत्पन्न भए।

तस्मादश्वा अजायन्त ये के चोभयादतः।
गावो ह जज्ञिरे तस्मात् तस्माज्जाता अजावयः ॥१०॥

विराट् पुरुषबाटै दुवैतिर दाँत भएका र गाई, बाख्रा, भेडा आदि उत्पन्न भए।

यत्पुरुषं व्यदधुः कतिधा व्यकल्पयन्।
मुखं किमस्य कौ बाहू का ऊरू पादा उच्येते ॥११॥

सङ्कल्पबाट उत्पन्न विराट् पुरुषलाई ज्ञानीहरू विभिन्न किसिमले वर्णन गर्दछन्। त्यसको कस्तो कल्पना गर्छन् ? त्यसको मुख कुन हो ? त्यसका पाखुरा, जङ्घा र गोडा कुनकुन हुन् ? शरीर संरचनामा त्यो पुरुष कसरी पूर्ण बनेको छ ?

ब्राह्मणोऽस्य मुखमासीद् बाहू राजन्यः कृतः।
ऊरू तदस्य यद्वैश्यः पद्भ्यां शूद्रो अजायत ॥१२॥

त्यस विराट् पुरुषको मुख ब्रह्मज्ञानी, पाखुरा शूरवीर, तिघ्रा वितरण गर्ने वैश्य र गोडा श्रमिक शूद्र वर्गले वा तिनको भावले प्रकट गराए।

चन्द्रमा मनसो जातश्चक्षोः सूर्यो अजायत।
मुखादिन्द्रश्चाग्निश्च प्राणाद्वायुरजायत ॥१३॥

त्यस विराट पुरुषका मनमा चन्द्रमा, आँखामा सूर्य, कानमा वायु र प्राण तथा मुखमा अग्निको रूप देखियो।

नाभ्या आसीदन्तरिक्षं शीर्ष्णो द्यौः समवर्तत।
पद्भ्यां भूमिर्दिशः श्रोत्रात्तथा लोकाँ अकल्पयन् ॥१४॥

त्यसै विराट् पुरुषका नाभीमा अन्तरिक्ष, शिरमा द्युलोक, गोडामा भूमि, कानमा दस दिशा प्रकट भएका लोकको कल्पना भयो।

सप्तास्यासन् परिधयस्त्रिः सप्त समिधः कृताः।
देवा यद्यज्ञं तन्वाना अबध्नन्पुरुषं पशुम् ॥१५॥

देवताहरूले यस सृष्टिरूपी यज्ञको सुरसार गर्दै सात वटा परिधि बनाए। सातलाई तीनले गुनेका समिधा भए। त्यसपछि स्वतन्त्र पुरुष पशुका बन्धनमा आबद्ध भयो।

यज्ञेन यज्ञमयजन्त देवास्तानि धर्माणि प्रथमान्यासन्।
ते ह नाकं महिमानः सचन्त यत्र पूर्वे साध्याः सन्ति देवाः ॥१६॥

देवताले यज्ञ पुरुषबाट यज्ञको यजन कार्य गरे। यजनलाई धर्म कार्यमा प्रथम स्थान प्राप्त भयो। यज्ञीय सङ्कल्पका नियममा महिमा सम्पन्न व्यक्ति स्वर्ग आदि स्थानमा निवास गर्न थाले। ती ठाउँमा यो प्रक्रिया हुनुभन्दा पहिले साधनका रूपमा देवताहरू नै रहने गरेका थिए।

[सूक्त - ९१]

**ऋषि** – अरुण वैतहव्य। **देवता** – अग्नि। **छन्द** – जगती त्रिष्टुप्।

सं जागृवद्भिर्जरमाण इध्यते दमे दमूना इषयन्निडस्पदे।
विश्वस्य होता हविषो वरेण्यो विभुर्विभावा सुषखा सखीयते ॥१॥

जागरुक पुरुषले प्रशंसनीय अग्नि प्रज्वलित गर्दछन्। सबै किसिमका हविका होता, उदार, दानशील अग्निदेव अन्नको कामना गर्दछन्। उनी श्रेष्ठ, सर्वव्यापी, प्रकाशवान् छन् र मित्रभाव राख्नेहरूका मित्र हुन्।

स दर्शतश्रीरतिथिर्गृहेगृहे वनेवने शिश्रिये तक्ववीरिव।
जनञ्जनं जन्यो नाति मन्यते विश आ क्षेति विश्योऽ विशंविशम् ॥२॥

सुशोभित र अतिथिका रूपले पूजा गरिने अग्निदेव यजमानका प्रत्येक घरमा र वनमा रहन्छन्। जनहितैषि अग्निदेव प्रत्येक वाणीमा व्याप्त हुन्छन्। त्यसैले उनी कसैको उपेक्षा गर्दैनन्। प्रजाका लागि कल्याणकारी अग्नि सबैका घरमा निवास गर्दछन्।

सुदक्षो दक्षैः क्रतुनासि सुक्रतुरग्ने कविः काव्येनासि विश्ववित्।
वसुर्वसूनां क्षयसि त्वमेक इद् द्यावा च यानि पृथिवी च पुष्यतः ॥३॥

हे कुशलताबाट उत्पन्न हुने अति कुशल अग्निदेव ! तिमी कर्ममध्येका श्रेष्ठ कर्म हौ र काव्यरूपी मन्त्रबाट उत्पन्न क्रान्तदर्शी हौ। तिमी सर्वज्ञ हुनाले वैभवका व्यवस्थापक हौ र द्यावापृथिवी संरक्षक बनेका सबै धनका प्रथम स्वामी हौ।

प्रजानन्नग्ने तव योनिमृत्वियमिडायास्पदे घृतवन्तमासदः।
आ ते चिकित्र उषसामिवेतयोऽरेपसः सूर्यस्येव रश्मयः ॥४॥

हे अग्निदेव ! यज्ञस्थलमास्तिर उपयुक्त समयमा घिउले सम्पन्न आवास बनाएका छौं। तिमी त्यहाँ पुगेर विराजमान होऊ। तिम्रो ज्वाला उषाकालको प्रकाशजस्तै पवित्र र सूर्यको किरणजस्तै निर्दोष छ।

तव श्रियो वर्ष्यस्येव विद्युतश्चित्राश्चिकित्र उषसां न केतवः।
यदोषधीरभिसृष्टो वनानि च परि स्वयं चिनुषे अन्नमास्ये ॥५॥

हे अग्निदेव ! तिमीले मुखमा हालेर अन्नरूपी औषधि र बोटबिरुवा डढाउँदा तिम्रो रश्मि वर्षा कालको विद्युत् अथवा उषा कालको प्रकाशजत्तिकै देखिन्छ।

तमोषधीर्दधिरे गर्भमृत्वियं तमापो अग्निं जनयन्त मातरः।
तमित्समानं वनिनश्च वीरुधोऽन्तर्वतीश्च सुवते च विश्वहा ॥६॥

ऋतुअनुसार उत्पन्न हुने अग्निको शक्ति औषधिले आफ्नै गर्भमा धारण गर्दछ। जलका धाराले माताजस्तो भएर अग्नि उत्पन्न गर्दछन्। वनस्पति र औषधिले त्यसलाई गर्भका रूपमा धारण गरेर उत्पन्न गराउँछन्।

वातोपधूत इषितो वशाँ अनु तृषु यदन्ना वेविषद्वितिष्ठसे।
आ ते यतन्ते रथ्योऽ यथा पृथक् शर्धांस्यग्ने अजराणि धक्षतः ॥७॥

हे अग्निदेव ! वायुले प्रकम्पित र प्रेरित हुँदै आफ्नो आहार वनस्पतिलाई तिम्रा लप्काले चारै तिरबाट घेर्दा त्यो अदम्य तेज सबैलाई भस्म गराउने विचारले रथमा बसेको शूरवीरझैं सबै दिशामा बढ्दछ।

मेधाकारं विदथस्य प्रसाधनमग्निं होतारं परिभूतमं मतिम्।
तमिदर्भे हविष्या समानमित्तमिन्महे वृणते नान्यं त्वत् ॥८॥

विवेक र बुद्धि बढाउने, शत्रुको विनाश गर्ने, यज्ञ एवं देवताका होताजस्तै बनेका अग्निदेवलाई हामी वन्दना गर्दछौं। हे अग्निदेव ! हविष्यान्न ग्रहण गर्न तिमीलाई हामी साझा स्वरमा आह्वान गर्दछौं। तिमीबाहेक अरू कसैलाई पनि पुकार्दैनौं।

त्वामिदत्र वृणते त्वायवो होतारमग्ने विदथेषु वेधसः।
यद्देवयन्तो दधति प्रयांसि ते हविष्मन्तो मनवो वृक्तबर्हिषः ॥९॥

हे अग्निदेव ! यज्ञका समयमा प्रतिष्ठित गराउने विचारले हामी होताका रूपमा तिमीलाई नै वरण गर्दछौं। सुखदायी देवत्वको अभिलाषा गर्ने याजक कुश काटेर तिम्रै लागि आहुति दिने गर्दछन्।

तवाग्ने होत्रं तवा पोत्रमृत्वियं तव नेष्ट्रं त्वमग्निदृतायतः।
तव प्रशास्त्रं त्वमध्वरीयसि ब्रह्मा चासि गृहपतिश्च नो दमे ॥१०॥

हे अग्निदेव ! उपयुक्त समयमा तिमीले नै होता र पोताको कार्य गर्नुपर्ने हुन्छ। यज्ञकर्ता यजमानका लागि तिमी नै नेष्टा र आग्नीध्र पनि हौ। प्रशास्ता र अध्वर्युको कार्य पनि तिमी नै निर्वाह गर्दछौ। तिमी नै ब्रह्मा र घरमा रहेका गृहपति पनि हौ।

यस्तुभ्यमग्ने अमृताय मर्त्यः समिधा दाशदुत वा हविष्कृति।
तस्य होता भवसि यासि दूत्य१मुप ब्रूषे यजस्यध्वरीयसि ॥११॥

हे अग्निदेव ! तिमीलाई अमृतको रूप सम्झेर समिधा र हविष्यान्न समर्पित गर्ने मानिसका लागि तिमी होता हौ। उनीहरूकै लागि तिमी देवतासमक्ष दूतको काम गर्न पुग्दछौ। ब्रह्मको जस्तै तिमी उपदेश गर्दछौ। यजमानका रूपमा हवि समर्पित गर्दछौ। र यज्ञमा अध्वर्युको कार्य गर्दछौ।

इमा अस्मै मतयो वाचो अस्मदाँ ऋचो गिरः सुष्टुतयः समग्मत।
वसूयवो वसवे जातवेदसे वृद्धासु चिद्वर्धनो यासु चाकनत् ॥१२॥

अग्निदेवकै निम्ति यी सबै वेदका वाक्य र स्तोत्र एकाग्रतापूर्वक उच्चारण गर्दछौं। सर्वज्ञ र आश्रयका रूपमा रहेका अग्निदेवमा धनको कामनाले नै स्तोत्र समर्पित हुन्छ। ऐश्वर्य बढाउने अग्निदेव यस्तै स्तुतिले ज्यादै हर्षित हुन्छन्।

इमां प्रत्नाय सुष्टुतिं नवीयसीं वोचेयमस्मा उशते शृणोतु नः।
भूया अन्तरा हृद्यस्य निस्पृशे जायेव पत्य उशती सुवासाः ॥१३॥

स्तोत्रका अभिलाषी प्राचीन अग्निदेवलाई सर्वोत्तम, नवीन र सुन्दर स्तोत्र उच्चारण गर्छौं। अग्निदेवले हाम्रो प्रार्थना सुनून्। सौभाग्यको आकाङ्क्षा भएकी नारी शोभायमान वस्त्र र अलङ्कारले सजिएझैं देखिने अग्निदेवलाई हामी हृदयमा धारण गर्दछौं।

यस्मिन्नश्वास ऋषभास उक्षणो वशा मेषा अवसृष्टास आहुताः।
कीलालपे सोमपृष्ठाय वेधसे हृदा मतिं जनये चारुमग्नये ॥१४॥

अन्नको रसपान गर्ने, सोमको आहुति ग्रहण गर्ने, श्रेष्ठ बुद्धिले सम्पन्न अग्निदेवका लागि मन र बुद्धि शुद्ध गरौं। यसो भएपछि नै अश्व, सेचन गर्न सक्षम साँढे, गाई र भेडा आदि सजिसजाउ भएर कोसेलीका रूपमा प्राप्त हुनेछन्।

अहाव्यग्ने हविरास्ये ते स्रुचीव घृतं चम्वीव सोमः।
वाजसनिं रयिमस्मे सुवीरं प्रशस्तं धेहि यशसं बृहन्तम् ॥१५॥

हे अग्निदेव ! तिम्रा ज्वालामा हामी हवि प्रदान गर्दछौं। सुरोमा घिउ र जम्मा पार्ने पात्रमा सोमरस रहेझैं हामीलाई अन्न, वीर पुत्र आदि गतिला धन र सबै लोकमा यशस्वी हुन सक्ने खालको अपार वैभव प्रदान गरेर सुखी बनाऊ।

[सूक्त - ९२]

**ऋषि** - शार्यात मानव। **देवता** - विश्वेदेवा। **छन्द** - जगती।

यज्ञस्य वो रथ्यं विश्पतिं विशां होतारमक्तोरतिथिं विभावसुम्।
शोचञ्छुष्कासु हरिणीषु जर्भुरद्वृषा केतुर्यजतो द्यामशायत ॥१॥

हे देवता हो ! तिमीहरू यज्ञका नायक, मानिसका संरक्षक, होता, रात्रिका अतिथि र विभिन्न ऐश्वर्यसम्पन्न अग्निदेवको अर्चना गर। सुकेका काठ डढाउने र काँचा काठमा तेर्सिने, सुखवर्द्धक र यज्ञका ध्वजारूपी यजनीय अग्निदेव आकाशमा शयन गर्दछन्।

इममञ्जस्पामुभये अकृण्वत धर्माणमग्निं विदथस्य साधनम्।
अक्तुं न यह्वमुषसः पुरोहितं तनूनपातमरुषस्य निंसते ॥२॥

देवता र मानिसका सबैभन्दा ठूला संरक्षक र धर्म धारण गर्ने अग्निदेवलाई यज्ञका लागि साधक बनाइएको छ। उनी तेजले सम्पन्न वायुका पुत्र र अघि लागेर बाटो देखाउने महान् नेता हुन्। उषाहरूले उनलाई सूर्यदेवलाई झैं स्पर्श गर्दछन्।

बडस्य नीथा वि पणेश्च मन्महे वया अस्य प्रहुता आसुरत्तवे।
यदा घोरासो अमृतत्वमाशतादिज्जनस्य दैव्यस्य चर्किरन् ॥३॥

स्तुति गर्न योग्य अग्निदेवसित सम्बन्धित ज्ञान सधैं सत्य होस् भन्ने हामी चाहन्छौं। यज्ञका अग्निमा प्रदान गरिएको हाम्रो आहुति अग्निदेवले सेवन गरुन् भन्ने हामीले चाहेका छौं। यज्ञका अग्निका ज्वालाले प्रचण्ड रूप लिएर देदीप्यमान हुँदा अग्निदेवका निम्ति हामी आहुति प्रदान गर्दछौं।

ऋतस्य हि प्रसितिर्द्यौरुरु व्यचो नमो मह्य१रमतिः पनीयसी।
इन्द्रो मित्रा वरुणः सं चिकित्रिरेऽथो भगः सविता पूतदक्षसः ॥४॥

विस्तृत द्युलोक, व्यापक अन्तरिक्षलोक, अत्यन्त प्रशंसनीय एवं अनन्त पृथ्वीले यज्ञका अग्निलाई प्रणाम गर्दछन्। इन्द्र, मित्र, भग, सविता आदि पवित्र सामर्थ्यसम्पन्न देवताले उनलाई सम्मान गर्दछन्।

प्र रुद्रेण ययिना यन्ति सिन्धवस्तिरो महीमरमतिं दधन्विरे।
येभिः परिज्मा परियन्नुरु ज्रयो वि रोरुवज्जठरे विश्वमुक्षते ॥५॥

गतिशील मरुत्‌हरूको सहयोग प्राप्त गरेर तीव्रताका साथ असीम भूक्षेत्र ढाक्दै नदी प्रवाहित हुन्छन्। सबैतिर विचरण गर्ने इन्द्रदेव मरुत्‌हरूका सहायताले आकाशमा गर्जन गर्दछन् र महावेगशाली भएर सम्पूर्ण विश्वमा नै जलको वर्षा गराउँछन्।

क्राणा रुद्रा मरुतो विश्वकृष्टयो दिवः श्येनासो असुरस्य नीडयः।
तेभिश्चष्टे वरुणो मित्रो अर्यमेन्द्रो देवेभिरर्वशेभिरर्वशः ॥६॥

मरुत्‌गणले आफ्नो कार्य प्रारम्भ गरेकै समयमा सबै मानिसमा उनी व्याप्त हुन्छन्। उनी अन्तरिक्षको श्येन पक्षी र मेघका आश्रय बनेका छन्। वरुण, मित्र, अर्यमा र अश्वमा आरोहण गरेका इन्द्रदेव वेगशाली मरुत्‌गणका साथमा यी सबै प्रकरण हेर्दछन्।

इन्द्रे भुजं शशमानास आशत सूरो दृशीके वृषणश्च पौंस्ये।
प्र ये न्वस्यार्हणा ततक्षिरे युजं वज्रं नृषदनेषु कारवः ॥७॥

स्तोताहरू इन्द्रदेवसित संरक्षण, बल, पौरख र सूर्यदेवसित दृष्टिको शक्ति प्राप्त गर्छन्। इन्द्रदेवलाई उचित किसिमले स्तुति गर्ने स्तोताले यज्ञका समयमा वज्रको सहायता प्राप्त गर्दछन्।

सूरश्चिदा हरितो अस्य रीरमदिन्द्रादा कश्चिद्भयते तवीयसः।
भीमस्य वृष्णो जठरादभिश्वसो दिवेदिवे सहुरिः स्तन्नबाधितः ॥८॥

इन्द्रदेवका डरले सूर्य पनि आफ्ना अश्व धपाउँछन् र सोझो मार्गमा सबैलाई प्रसन्न गराउँदै हिँड्दछन्। भयानक र जलवर्षक इन्द्रदेवसित को नडराउला ? उनी आकाशमा गर्जन्छन्। शत्रु पराजित गराउने वज्रको ध्वनि उनका प्रभावले सधैं निस्कने गर्दछ।

स्तोमं वो अद्य रुद्राय शिक्वसे क्षयद्वीराय नमसा दिदिष्टन।
येभिः शिवः स्ववाँ एवयावभिर्दिवः सिषक्ति स्वयशा निकामभिः ॥९॥

हे ऋत्विक्‌हरू हो ! अश्वमा आरुढ र उत्साहप्रद मरुत्‌हरूको सहयोग प्राप्त गरेर आत्मशक्तिले सम्पन्न, आफ्ना सामर्थ्यले स्वयं कीर्तिमान्, सुखप्रद, दिव्यलोकबाट साधकको आशा पूरा गराउने, निष्काम रूपले मरुत्‌हरूसँग रहने, वीर, शत्रुका घातक, सामर्थ्यशाली रुद्रदेवलाई नमस्कार गर र स्तोत्र समर्पित गर।

ते हि प्रजाया अभरन्त वि श्रवो बृहस्पतिर्वृषभः सोमजामयः।
यज्ञैरथर्वा प्रथमो वि धारयद्देवा दक्षैर्भृगवः सं चिकित्रिरे ॥१०॥

कामना वर्षा गराउने, बृहस्पति र सोमको अभिलाषा गर्ने देवताले प्रजाका लागि अन्न आदि सङ्ग्रह गरे। सर्वप्रथम अथर्वा ऋषिले यज्ञद्वारा देवतालाई आनन्दित गराए, देवता र भृगुका कुलमा उत्पन्न ऋषिहरू यज्ञमा गएर त्यस विषयमा जानकारी लिए।

ते हि द्यावापृथिवी भूरिरेतसा नराशंसश्चतुरङ्गो यमोऽदितिः।
देवस्त्वष्टा द्रविणोदा ऋभुक्षणः प्र रोदसी मरुतो विष्णुरर्हिरे ॥११॥

नराशंस यज्ञमा चार किसिमका अग्नि स्थापित गरियो। अति वर्षक द्यावापृथिवी, यम, अदिति, धनदाता अग्निदेव, ऋभुगण, रुद्रपत्नी र विष्णु आदि सबै देवता यज्ञमा स्तोत्रले प्रशंसित हुन्छन्।

उत स्य न उशि जामुर्विया कविरहिः शृणोतु बुध्न्यो३ हवीमनि।
सूर्यामासा विचरन्ता दिविक्षिया धिया शमीनहुषी अस्य बोधतम् ॥१२॥

श्रेष्ठ आकाङ्क्षाले हामीले यज्ञका समयमा पाठ गरेका विस्तृत स्तोत्र अन्तरिक्षवासी अहिर्बुध्न्य अग्निदेवले सबै सुनून्। आकाशमा भ्रमण गर्ने सूर्य र चन्द्रमा स्थिर भएर अन्तःकरणदेखि नै यो स्तोत्र सुनून्।

प्र नः पूषा चरथं विश्वदेव्योऽपां नपादवतु वायुरिष्टये।
आत्मानं वस्यो अभि वातमर्चत तदश्विना सुहवा यामनि श्रुतम् ॥१३॥

सम्पूर्ण देवताका कल्याणकारी र जलका वंशज पूषादेवले हाम्रा पशु आदिको संरक्षण गरुन्। यज्ञका निम्ति वायुदेव हाम्रा संरक्षक भइदिऊन्। आत्मरूपमा रहेका वायुदेवको प्रार्थना अन्न र धन प्राप्तिका लागि गरौं। हे स्तुति गर्न योग्य अश्विनीकुमार हो ! मार्गमा यात्रा गर्दा तिमीहरू पनि यो स्तोत्र सुन।

विशामासामभयानामधिक्षितं गीर्भिरु स्वयशसं गृणीमसि।
ग्नाभिर्विश्वाभिरदितिमनर्वणमक्तोर्युवानं नृमणा अधा पतिम् ॥१४॥

अन्तःकरणदेखि नै प्रजालाई अभय प्रदान गर्ने र आफ्नो यशस्वी कीर्ति स्वयं उत्पादन गर्ने प्रार्थना हामी गर्दछौं। देवपत्नीहरूसँग स्वतन्त्र रहने देवमाता अदिति र निशापति चन्द्रमालाई हामी प्रार्थना गर्दछौं। सबै मानिसमाथि कृपा गर्ने आदित्य र सम्पूर्ण जगत्का पालक इन्द्रदेवलाई पनि हामी प्रार्थना गर्दछौं।

रेभदत्र जनुष पूर्वो अङ्गिरा ग्रावाण ऊर्ध्वा अभि चक्षुरध्वरम्।
येभिर्विहाया अभवद्विचक्षणः पाथः सुमेकं स्वधितिर्वनन्वति ॥१५॥

यस यज्ञमा सुजन्मा अङ्गिरा ऋषिले देवतालाई प्रार्थना गरेका छन्। सोमरस निकाल्नका लागि कुट्ने वा पिंध्ने ढुङ्गा माथिसम्म उचाल्ने काममा लागेकाहरू यज्ञीय सोम हेर्दछन् र त्यो प्राप्त गर्दछन्। सबै कुराको ज्ञान भएका इन्द्रदेव सोमरस पान गरेर खुसी भएका थिए। इन्द्रदेवका वज्रले आकाशमार्गबाट अन्न उत्पन्न गराउने जल प्रकट गरोस्।

[सूक्त - ९३]

ऋषि – तान्व पार्थ। देवता – विश्वेदेवा। छन्द – पंक्ति अनुष्टुप् बृहती।

महि द्यावापृथिवी भूतमुर्वी नारी यह्वी न रोदसी सदं नः।
तेभिर्नः पातं सह्यस एभिर्नः पातं शुषणि ॥१॥

हे द्यावापृथिवी ! तिमीहरू दुवै अत्यन्त विस्तृत भएर नेतृत्व गर्ने नारीजस्तै हामीलाई सधैं सहयोगी होओ र शत्रुबाट जोगाओ। हामीलाई अनेकौं किसिमले बचाओ।

यज्ञेयज्ञे स मर्त्यो देवान्त्सपर्यति। यः सुम्नैर्दीर्घश्रुत्तम आविवासात्येनान् ॥२॥

यज्ञमा नै देवताको अर्चना गर्ने, विभिन्न शास्त्रको ज्ञान लिने र सुखदायी हवि अर्पण गर्दै अर्चना गर्ने मानिस सबै वास्तविक सेवक हुन्।

विश्वेषामिरज्यवो देवानां वार्महः।
विश्वे हि विश्वमहसो विश्वे यज्ञेषु यज्ञियाः ॥३॥

हे सर्वेश्वर ! देवताको महिमामय तथा धारण गर्न योग्य ऐश्वर्य हामीलाई प्रदान गर। निश्चय नै तिमी सम्पूर्ण तेजस्विता धारण गर्दछौ र यज्ञमा आफ्नो भाग प्राप्त गर्दछौ।

ते घा राजानो अमृतस्य मन्द्रा अर्यमा मित्रो वरुणः परिज्मा।
कद्रुद्रो नृणां स्तुतो मरुतः पूषणो भगः ॥४॥

अर्यमा, मित्र, सर्वज्ञ वरुण, सबैले स्तुति गर्ने रुद्र, सबैलाई पोषण दिने मरुत्गण र भगदेव आदि देवता स्तुति गर्न योग्य छन्। यिनीहरू मानिसका लागि सुखदाता र अमृतजस्तै हविरूपी द्रव्यका अधिपति हुन्।

उत नो नक्तमपां वृषण्वसू सूर्यामासा सदनाय सधन्या।
सचा यत्साद्येषामहिर्बुध्नेषु बुध्न्यः ॥५॥

हे वृषण्वसू नामले चिनिएका अश्विनीकुमार हो ! अहिर्बुध्न्य अग्निदेव बादलको पानीमा बसेका हुन्छन्। सूर्य र चन्द्र पनि जलको शक्तिका साधन हुन्। उनीहरूसँगै तिमीहरू पनि रातदिन हाम्रा आवासमा रसको वर्षा गराओ।

उत नो देवावश्विना शुभस्पती धामभिर्मित्रावरुणा उरुष्यताम्।
महः स राय एषतेऽति धन्वेव दुरिता ॥६॥

कल्याणकारी कर्मका पालक हे अश्विनीकुमार हो। मित्र, र वरुणदेव आफ्ना शारीरिक तेजले हाम्रो संरक्षण गरुन्। यी देवताले संरक्षण गरेका यजमानले महान् ऐश्वर्य प्राप्त गर्दछन् र कष्टदायी मरुभूमिजस्ता स्थितिबाट मुक्ति पाउँछन्।

उत नो रुद्रा चिन्मृडतामश्विना विश्वे देवासो रथस्पतिर्भगः।
ऋभुर्वाज ऋभुक्षणः परिज्मा विश्ववेदसः ॥७॥

रुद्रका पुत्र मरुत्, अश्विनीकुमार, रथमा आरुढ भएका पूषा, ऋभु, अन्नका धनी भग, सर्वत्र गमन गर्ने इन्द्र र सर्वज्ञ ऋभुगण आदि सबै देवताले हामीलाई सुख प्रदान गरुन्। हामी सबै देवताको प्रार्थना गर्दछौं।

ऋभुर्ऋभुक्षा ऋभुर्विधतो मद आ ते हरी जूजुवानस्य वाजिना।
दुष्टरं यस्य साम चिदृधग्यज्ञो न मानुषः ॥८॥

महान् इन्द्रदेव यज्ञद्वारा कान्तिमान् हुन्छन्। हे इन्द्रदेव ! तिम्रा सेवक यजमान पनि यज्ञले आनन्दित हुन्छन्। यज्ञतर्फ अति हतारिएर आउने तिम्रा रथका घोडा ज्यादै बलिया छन्। तिनले गर्ने यज्ञको अनुष्ठान मानिसका लागि साध्य छैन। तिनीहरू सबै दिव्यतायुक्त हुन्छन्।

कृधी नो अह्रयो देव सवितः स च स्तुषे मघोनाम्।
सहो न इन्द्रो वह्निभिर्न्येषां चर्षणीनां चक्रं रश्मिं न योयुवे ॥९॥

हे सवितादेव ! हामीलाई कहिल्यै पनि लज्जित हुन नदेऊ। तिमी स्तोताबाट स्तुत्य छौ। मरुत्हरूसितै निवास गर्ने इन्द्रदेव रथका पाङ्ग्रा र लगामरूपी किरणजस्तै भएर हाम्रा लागि संसार नियन्त्रित गर्दछन्।

ऐषु द्यावापृथिवी धातं महदस्मे वीरेषु विश्वचर्षणि श्रवः।
पृक्षं वाजस्य सातये पृक्षं रायोत तुर्वणे ॥१०॥

हे द्यावापृथिवी ! हाम्रा वीर पुत्रलाई जीवनमा काम लाग्ने यश प्रदान गर। शक्ति उत्पन्न गराउनका लागि पौष्टिक अन्न आदि प्रदान गर र शत्रुसंहार गर्दै आपद्‌बाट मुक्त हुनका लागि धन प्रदान गर।

एतं शंसमिन्द्रास्मयुष्ट्वं कूचित्सन्तं सहसावन्नभिष्टये सदा पाह्यभिष्टये।
मेदतां वेदता वसो ॥११॥

हे इन्द्रदेव ! हाम्रा नजिक तिमी आउन खोज्छौ। तिमी जहाँसुकै रहे पनि स्तोतालाई चाहेको कुरो पूरा गराउँदै सधैँ सुरक्षा गरिराख। तिम्रा लागि स्तुतिको गीत गाउने स्तोताको विचार सुनिदेऊ।

एतं मे स्तोमं तना न सूर्ये द्युतद्यामानं वावृधन्त नृणाम्।
संवननं नाश्व्यं तष्टेवानपच्युतम् ॥१२॥

सूर्यका व्यापक तेजस्वी रश्मिले दीप्तिमान् ज्योति फिँजाएझैं हाम्रा यस स्तोत्रका गीतले मानिसलाई श्रीसम्पत्ति बढाइदियोस्। शिल्पकारले बलियो, सजिलोसित गुड्ने घोडाले तान्न सजिलो र राम्रो रथ बनाएझैं हामी पनि स्तोत्र रचना गरौं।

वावर्त येषां राया युक्तैषां हिरण्ययी। नेमधिता न पौंस्या वृथेव विष्टान्ता ॥१३॥

जसबाट हामी ऐश्वर्यको कामना गर्दछौं, उनकै लागि हामी अति श्रेष्ठ स्तोत्र बारम्बार उच्चारण गर्दछौं। जसरी युद्धमा क्रमैसँग पराक्रम गर्दै गइन्छ अथवा घडीको चक्र क्रमिक रूपमा अघिपछि चल्दछ, उसै किसिमको हाम्रो स्तोत्र होस्।

प्र तद्दुःशीमे पृथवाने वेने प्र रामे वोचमसुरे मघवत्सु।
ये युक्त्वाय पञ्च शतास्मयु पथा विश्राव्येषाम् ॥१४॥

पाँच सय रथमा घोडा जोतेर हाम्रा यज्ञको मार्गमा यात्रा गर्ने देवताका लागि प्रशंसनीय स्तोत्रको उच्चारण हामीले दुःशीम, पृथवान्, वेन र शक्तिशाली राम आदि ऐश्वर्यशाली राजाका नजिकमा पनि गरेका छौं।

अधीन्न्वत्र सप्ततिं च सप्त च।
सद्यो दिदिष्ट तान्वः सद्यो दिदिष्ट पार्थ्यः सद्यो दिदिष्ट मायवः ॥१५॥

ती राजासित तान्व, पार्थ्य र मायव आदि ऋषिले तुरुन्तै सतहत्तर सय गाई माग गरे।

[सूक्त - ९४]

ऋषि - अर्बुद काद्रवेय। देवता - ग्रावा। छन्द - जगती त्रिष्टुप्।

**प्रैते वदन्तु प्र वयं वदाम ग्रावभ्यो वाचं वदता वदद्भ्यः।**
**यदद्रयः पर्वताः साकमाशवः श्लोकं घोषं भरथेन्द्राय सोमिनः ॥१॥**

ग्रावाले पेल्ने काम गर्दाखेरि हामी याजक आवाज निकालिरहेका ढुङ्गालाई प्रार्थना गर्दछौं। हे ऋत्विक्हरू हो। तिमीहरू स्तोत्र पाठ गर। आदरणीय र दरिला ढुङ्गाले इन्द्रदेवका लागि ध्वनि निकाल्दै सोम पेल्दा सोमपान गरेर उनी सन्तुष्ट हुन्छन्।

**एते वदन्ति शतवत्सहस्रवदभि क्रन्दन्ति हरितेभिरासभिः।**
**विष्ट्वी ग्रावाणः सुकृतः सुकृत्यया होतुश्चित्पूर्वे हविरद्यमाशत ॥२॥**

ग्रावाले सयौं वा हजारौं मानिसको जस्तै आवाज निकाल्छन्। तिनका तेजस्वी मुखले देवतालाई आह्वान गर्दछ। उत्तम कर्म गर्ने यी ढुङ्गा यज्ञमा पुगेर देवता बोलाउने अग्निदेवभन्दा पहिले नै सेवन गर्ने हविष्यान्न प्राप्त गर्दछन्।

**एते वदन्त्यविदन्नना मधु न्यूङ्खयन्ते अधि पक्व आमिषि।**
**वृक्षस्य शाखामरुणस्य बप्सतस्ते सूभर्वा वृषभाः प्रेमराविषुः ॥३॥**

राता रङ्गका वृक्षका हाँगाविँगा खाइरहेका गोरुजस्तै यी ग्रावाले शब्द निकाल्छन्। मासु पाक्दा मांसाहारीले खुसीको स्वर निकालेझैं यी ग्रावा सोम पेल्दा शब्द निकाल्छन्।

**बृहद्वदन्ति मदिरेण मन्दिनेन्द्रं क्रोशन्तोऽविदन्नना मधु।**
**संरभ्या धीराः स्वसृभिरनर्तिषुराघोषयन्तः पृथिवीमुपब्दिभिः ॥४॥**

सोम चुसेझैं पेल्न लागेका आनन्दप्रद यी ग्रावाले भयङ्कर शब्द निकाल्दै इन्द्रदेवलाई आह्वान गर्दछन्। यिनीहरूले आफ्ना मुखमा आनन्दप्रद सोमरस प्राप्त गरे। पेल्ने कार्यमा लागेर बिस्तारैसित गम्भीर शब्दले गर्जन गर्दै पृथ्वीमा व्याप्त हुन्छन्। ग्रावासँगै सोम दिदीबहिनीजस्ता औंलामा हर्षित भएर नाच्दछन्।

**सुपर्णा वाचमक्रतोप द्यव्याखरे कृष्णा इषिरा अनर्तिषुः।**
**न्यङ्नि यन्त्युपरस्य निष्कृतं पुरू रेतो दधिरे सूर्यश्वितः ॥५॥**

यी ढुङ्गाको ध्वनि सुन्दा अन्तरिक्षमा चरा कराइरहेका पो हुन् कि जस्तो लाग्दछ। मृगस्थलीमा कृष्णसार नाच्दै छन्। पेलिएको सुखदायी सोमरस ढुङ्गाबाट चुहुँदै, मानौं तिनीहरू सूर्यजत्तिकै सफा रूपमा रहेको जल पिउन लागेका छन्।

**उग्राइव प्रवहन्तः समायमुः साकं युक्ता वृषणो बिभ्रतो धुरः।**
**यच्छ्वसन्तो जग्रसाना अराविषुः शृण्व एषां प्रोथथो अर्वतामिव ॥६॥**

बलिया अश्वका आपसी सहयोगले रथको जुवा थाम्दै रथ तानेझैं कामना पूरा गराउने ढुङ्गा भारी बोकेर सोमरसको वर्षा गर्छन्। यिनले सोमरस ग्रहण गर्दै सास फेरेझैं आवाज निकाल्छन् र त्यसै बेला अश्वझैं शब्द यिनका मुखबाट आएको सुनिन्छ।

**दशावनिभ्यो दशकक्ष्येभ्यो दशयोक्त्रेभ्यो दशयोजनेभ्यः।**
**दशाभीशुभ्यो अर्चताजरेभ्यो दश धुरो दश युक्ता वहद्भ्यः ॥७॥**

दस औंलासँग सम्बन्धित, दस किसिमका कर्म प्रकट गर्ने, दस वटा अश्वजस्तै, सोममा मिसाइएको, दस कर्म निर्वाह गर्ने, सञ्चालनकर्ता, दस किसिमका शक्तिले सम्पन्न भएर पेल्ने कार्यमा खटिएका ढुङ्गाको महिमा गुणगान गरौं।

**ते अद्रयो दशयन्त्रास आशवस्तेषामाधानं पर्येति हर्यतम्।**
**त ऊ सुतस्य सोम्यस्यान्धसोंऽशोः पीयूषं प्रथमस्य भेजिरे ॥८॥**

यी ढुङ्गाले दस वटा औंलालाई बन्धनरूपी डोरीजस्तै ठानेर शीघ्रताका साथ काम गर्दछन्। यी ढुङ्गाको पेल्ने काम अत्यन्त प्रशंसनीय र गतिशील छ। चुहिँदै गरेका सोमरसको भाग सबैभन्दा पहिले यिनीहरूलाई नै प्राप्त हुन्छ।

ते सोमादो हरी इन्द्रस्य निंसतेऽशुं दुहन्तो अध्यासते गवि।
तेभिर्दुग्धं पपिवान्त्सोम्यं मध्विन्द्रो वर्धते प्रथते वृषायते ॥९॥
यी ढुङ्गाले सोमरस सेवन गरेर इन्द्रदेवका दुवै अश्वलाई स्नेहपूर्वक चुम्दछन्। सोमरस पेल्दाखेरि यिनीहरू चाल्ने यन्त्रभन्दा माथि नै रहेका हुन्छन्। यी ढुङ्गाका सहायताले सोमवल्लीबाट निकालिने मिठो रस पिएर इन्द्रदेव बढ्दछन्, विकसित हुन्छन् र बलियो साँढेजस्तो भएर पराक्रम देखाउँछन्।

वृषा वो अंशुर्न किला रिषाथनेडावन्तः सदमित्स्थनाशिताः।
रैवत्येव महसा चारवः स्थन यस्य ग्रावाणो अजुषध्वमध्वरम् ॥१०॥
हे ढुङ्गा हो ! सोमरसले तिमीहरूलाई चाहिएको जस्तै सामर्थ्य प्रदान गर्दछ। तिमीहरू कहिल्यै निराश वा क्षीण नहोओ। अन्न आदिले सम्पन्न भएझैं तिमीहरू सधैं भोजन आदिले सन्तुष्ट रहन्छौ। तिमीहरू जुन यज्ञ ग्रहण गर्दछौ, ती ऐश्वर्यशाली मानिस उज्ज्वल कान्तिले युक्त र कल्याणकारी हुने गर्दछन्।

तृदिला अतृदिलासो अद्रयोऽश्रमणा अशृथिता अमृत्यवः।
अनातुरा अजराः स्थामविष्णवः सुपीवसो अतृषिता अतृष्णजः ॥११॥
हे ढुङ्गा हो ! तिमीहरूलाई थकाइ, अल्छ्याइँ, मृत्यु, रोग, बुढ्यौली, लोभलालच, मायामोह आदिले कहिल्यै छोप्दैन। तिमीहरू आफैं निराशरहित भएर अन्य दुष्टलाई निराश गराउँछौ। तिमीहरू चाहिँदो बटुल्न र नचाहिँदो फ्याँक्नमा सिपालु छौ।

ध्रुवा एव व पितरो युगेयुगे क्षेमकामासः सदसो न युञ्जते।
अजुर्यासो हरिषाचो हरिद्रव आ द्यां रवेण पृथिवीमशुश्रवुः ॥१२॥
हे ढुङ्गा हो ! तिमीहरूका पुर्खा पर्वत हुन्। ती पर्वत उहिलेदेखि नै अटल, पूर्ण अभिलाषाले युक्त र कुनै कारणले आफ्नो ठाउँबाट हट्न नरुचाउने छन्। तिनीहरू बुढिँदैनन् र सोमवल्लीले भरिएको हरियाली बोकेर आकाश र पृथ्वी सोम पेलेका शब्दले परिपूर्ण गराउने खालका छन्।

तदिद्वदन्त्यद्रयो विमोचने यामन्नञ्जस्पाइव घेदुपब्दिभिः।
वपन्तो बीचमवि धान्याकृतः पृञ्चन्ति सोमं न मिनन्ति बप्सतः ॥१३॥
ढुङ्गाले सोम पेल्ने काम गर्दा तीव्र गतिमा कुदेको रथजस्तै ध्वनि निकाल्छन्। पेल्नमा खटिएका ढुङ्गा, धानको बिउ छर्न लागेको किसानझैं सोम फिँजाउँछन्। उनीहरू त्यसलाई खाएर नोकसान गर्दैनन्।

सुते अध्वरे अधि वाचमक्रता क्रीडयो न मातरं तुदन्तः।
वि षू मुञ्चा सुषुवुषो मनीषां वि वर्तन्तामद्रयश्चायमानाः ॥१४॥
पूजनीय ढुङ्गा यज्ञमा सोम पेल्ने काम गर्दा आमासित खेल्ने बालक आफ्ना हातले आमालाई हिर्काएर खुसीले हाँसेझैं रमाएका देखिन्छन्। सोमरस पेल्न प्रयोग गरिएका ढुङ्गालाई विभिन्न किसिमले प्रार्थना गरौं। अब ढुङ्गाले पेल्ने काम बन्द गरुन्।

[सूक्त - ९५]

**ऋषि** - पुरूरवा उर्वशी। **देवता** - पुरूरवा उर्वशी। **छन्द** - त्रिष्टुप्।

हये जाये मनसा तिष्ठ घोरे वचांसि मिश्रा कृणवावहै नु।
न नौ मन्त्रा अनुदितास एते मयस्करन्परतरे चनाहन् ॥१॥
हे निष्ठुर पत्नी ! सद्भावनापूर्वक केही समय बस। हामी दुईको भेटघाट उपयोगी कुराका लागि सफल होस्। हामी दुईले एकापसमा गरेका विचारको आदानप्रदानबाट हाम्रो भविष्य सुखदायक हुन सक्दैन र ?

किमेता वाचा कृणवा तवाहं प्राक्रमिषमुषसामग्रियेव।
पुरूरवः पुनरस्तं परेही दुरापना वातइवाहमस्मि ॥२॥
फोसा कुराले मात्रै के लाभ होला र ? उषाको जस्तै गरी म पनि तिम्रै नजिकबाट हट्दै छु। त्यसै कारण हे पुरुरवा ! तिमी फेरि आफ्नो घर फर्केर जाऊ। म तिम्रा लागि वायुजस्तै दुर्लभ छु।

इषुर्न श्रिय इषुधेरसना गोषाः शतसा न रंहिः।
अवीरे क्रतौ वि दविद्युतन्नोरा न मायुं चितयन्त धुनयः ॥३॥
तिम्रो वियोगमा व्यथित भएपछि मेरा ठोक्राबाट विजयश्रीका निम्ति बाण निस्कँदैन। शक्तिशाली

भए पनि मैले असङ्ख्य गाई प्राप्त गर्न सक्दिनँ। वीरतारहित भएका कारण कर्म पनि अँध्यारोमा पर्न लाग्यो। युद्धमा शत्रु थर्काउने गरेका मैले अब सिंहजस्तो गर्जन गर्न सक्दिनँ।

**सा वसु दधती श्वशुराय वय उषो यदि वष्ट्यन्तिगृहात्।**
**अस्तं ननक्षे यस्मिञ्चाकन्दिवा नक्तं श्नथिता वैतसेन ॥४॥**

उषाकालमा उनले ससुराका लागि वैभव र आयु धारण गर्दी हुन्, त आफ्ना घरमा प्रवेश गर्न पाउँदी हुन्। अनि दिनरात कामना गरेजस्तै सुखको उपभोग पनि गर्न पाउँथिन्।

**त्रिः स्म माह्नः श्नथयो वैतसेनोत स्म मेऽव्यत्यै पृणासि।**
**पुरूरवोऽनु ते केतमायं राजा मे वीर तन्वा्स्तदासीः ॥५॥**

हे पुरुरवा ! दिउँसो तिमीले मलाई तीन बन्धनले बाँधेका थियौ। अन्य कुनै वीरताहीन र प्रजनन सामर्थ्य नभएकासित मेरो प्रतिद्वन्द्विता नै थिएन। त्यसै अभिप्रायले मैले तिम्रा शरीरअनुसारकै आश्रय पाउँथें। त्यति वेला पनि मेरा शरीरमा मेरै अधिकार थियो।

**या सुजूर्णिः श्रेणिः सुम्न आपिर्ह्रदेचक्षुर्न ग्रन्थिनी चरण्युः।**
**ता अञ्जयोऽरुणयो न सस्रुः श्रिये गावो न धेनवोऽनवन्त ॥६॥**

सजुर्णी, श्रेणी, सुम्नेआपी, ह्रदचक्षु, चरण्यु आदि तेजस्वी र रातो वर्णका अप्सरा तिम्रा भएर सजिएर आउँदैनन्। ती सबै देवी श्रीसम्पन्न, धारणशक्तिसम्पन्न र वाणीका प्रकाशले सम्पन्न भएर अब कराउँदै आउँदैनन्।

**समस्मिञ्जायमान आसत ग्ना उतेमवर्धन्नद्यः स्वगूर्ताः।**
**महे यत्त्वा पुरूरवो रणायावर्धयन्दस्युहत्याय देवाः ॥७॥**

हे पुरुरवा ! तिम्रो जन्म भएका वेला देवशक्ति पनि उत्पन्न भए। प्रवाहशील नदी स्वयंले उनलाई हुर्काईबढाई गरे। तिमीलाई ठूला सङ्ग्राममा शत्रु विनाश गर्नका लागि देवताले सामर्थ्यशक्तिले सम्पन्न गराए।

**सचा यदासु जहतीष्वत्कममानुषीषु मानुषो निषेवे।**
**अप स्म मत्तरसन्ती न भुज्युस्ता अत्रसन्नथस्पृशो नाश्वाः ॥८॥**

मानिसका यस चोलाले आफ्नो स्वरूप छोडेर अमानवी शक्ति उपभोग गर्न देवशक्तिका नजिकै जाँदा देवता डराएको पोथी हरिणझैं भएर रथमा नारेका घोडाझैं भाग्दथे।

**यदासु मर्तो अमृतासु निस्पृक्सं क्षोणीभिः क्रतुभिर्न पृङ्क्ते।**
**ता आतयो न तन्वः शुम्भत स्वा अश्वासो न क्रीडयो दन्दशानाः ॥९॥**

देवलोकमा निवास गर्ने अप्सरासित मानिसको चोला लिएका पुरुरवा अत्यन्त स्नेहले संवाद गर्दै क्रियाकलापमा सहयोग माग्न गएका वेला अप्सरा अन्तर्ध्यान हुँदै आफ्नो शरीर लुकाउँथे। तिनीहरू दाँतले लगाम टोक्दै चुर्कुसी मार्ने घोडाझैं भागे।

**विद्युन्न या पतन्ती दविद्योद्भरन्ती मे अप्या काम्यानि।**
**जनिष्टो अपो नर्यः सुजातः प्रोर्वशी तिरत दीर्घमायुः ॥१०॥**

उर्वशीले अन्तरिक्षबाट खस्ने विद्युत्झैं सेतो ज्योति धारण गरेर मेरो कामना पूरा गरिन्। उनका गर्भमा क्रियाशील मानिसको कल्याणकारी सुन्दर पुत्र उत्पन्न भयो। उर्वशीले त्यसलाई दीर्घायु प्रदान गर्दछिन्।

**जज्ञिष इत्था गोपीथ्याय हि दधाथ तत्पुरूरवो म ओजः।**
**अशासं त्वा विदुषी सस्मिन्नहन्न म आशृणोः किमभुग्वदासि ॥११॥**

हे पुरुरवा ! पृथ्वीको संरक्षण गर्न भनेर तिमीले पुत्र जन्माउन मभित्र गर्भ स्थापना गऱ्यौ भन्ने कुरो जानेर मैले वारम्बार भनिरहेकै थिएँ, तर तिमीले मेरा कुरामा ध्यान दिएनौ। तिमीले आपसी स्नेह नै भताभुङ्ग बनायौ। अब बिलाप गरेर केही लाभ हुनेछैन।

**कदा सूनुः पितरं जात इच्छाच्चक्रन्नाश्रु वर्तयद्विजानन्।**
**को दम्पती समनसा वि यूयोदध यदग्निः श्वशुरेषु दीदयत् ॥१२॥**

जन्म लिएपछि छोराले आँसु नबगाईकन परमेश्वर प्राप्त गर्ने इच्छामा लागेको आजसम्म कहिल्यै कतै छ र ? मन मिलेका दम्पतीलाई कसले छुट्याउन सक्छ र ? हे उर्वशी ! तिमीजस्तै यो पुत्ररूपी अग्नि कहिले तिम्रा ससुराका घरमा पसेर उज्यालो बनाऊला ?

प्रति ब्रवाणि वर्तयते अश्रु चक्रन्न क्रन्ददाध्ये शिवायै।
प्र तत्ते हिनवा यत्ते अस्मे परेह्यस्तं नहि मूर मापः ॥१३॥

हे पुरुरवा ! म तिम्रो हितका लागि बोल्दै छु। तिमी आँसु झार्दै नफर्क भन्ने किसिमको शुभकामना मेरो छ। तिमीले चाहेको पुत्र म तिमीकहाँ पुऱ्याइदिन्छु। तिमीभित्र बढेको आसक्ति मेटाऊ। मूर्ख व्यक्तिले मेरो ठेगाना पाउन सक्दैन।

सुदेवो अद्य प्रपतेदनावृत्परावतं परमां गन्तवा उ।
अधा शयीत निर्ऋतेरुपस्थेऽधैनं वृका रभसासो अद्युः ॥१४॥

तिमीप्रति हुरुक्क हुँदै व्यवहार गर्ने तिम्रो यो पुरुरवा भन्ने पति आज धर्तीमा पछारियोस् वा सुरक्षापूर्वक टाढा कतै जानका लागि हिँडोस् वा यहीँ भुईंमा पसारिएर मरोस् वा उसलाई वनका बलिया ब्वाँसा आदि हिंस्रक पशुले खाओस्।

पुरूरवो मा मृथा मा प्र पप्तो मा त्वा वृकासो अशिवास उ क्षन्।
न वै स्त्रैणानि सख्यानि सन्ति सालावृकाणां हृदयान्येता ॥१५॥

हे पुरुरवा ! तिमी मृत्युका मुखमा नपर। भुईंमा पसारा पनि नपर। अमङ्गलकारी ब्वाँसा आदिले पनि नखाऊन्। तिम्रो हानी नहोस्। स्त्रीसितको मैत्री र स्नेह स्थायी हुँदैन। स्त्री र ब्वाँसाको हृदय उस्तै हुन्छ।

यद्विरूपाचरं मर्त्येष्ववसं रात्रीः शरदश्चतस्रः।
घृतस्य स्तोकं सकृदह्न आश्नां तादेवेदं तातृपाणा चरामि ॥१६॥

मानिसको चोला विभिन्न रूपमा धारण गरेर मानिसका माझमै मैले भ्रमण गरेँ। तिमीसित म चार वर्षसम्म बसेँ। घिउ आदिको स्वाद दिनमा कैयौँ पटक प्राप्त गरेँ। त्यसैबाट सन्तुष्ट भएर म हिँड्डुल गर्दै छु।

अन्तरिक्षप्रां रजसो विमानीमुप शिक्षाम्युर्वशीं वसिष्ठः।
उप त्वा रातिः सुकृतस्य तिष्ठान्नि वर्तस्व हृदयं तप्यते मे ॥१७॥

अन्तरिक्ष परिपूर्ण गर्ने र तेज उत्पन्न गर्ने उर्वशीलाई म वसिष्ठको वंशज पुरुरवा आफ्ना नियन्त्रणमा राख्न चाहन्छु। असल कर्मले सम्पन्न भएका दाता तिम्रा नजिकै रहून्। मेरो हृदय तिम्रा वियोगमा व्याकुल भएको छ। हे उर्वशी ! तिमी फेरि फिर्ता आऊ।

इति त्वा देवा इम आहुरैड यथेमेतद्भवसि मृत्युबन्धुः।
प्रजा ते देवान्हविषा यजाति स्वर्ग उ त्वमपि मादयासे ॥१८॥

हे इडाका पुत्र ! तिमी मृत्युमाथि विजय प्राप्त गर्न सक्छौ भनेर यी सबै देवताले तिम्रै विषयमा कुरा गरिरहेका छन्। जीवनको काम पूजासमान मान र स्वर्गमा गएर सुख तथा आनन्द प्राप्त गर।

[सूक्त - ९६]

ऋषि - आङ्गिरस। देवता - हरि। छन्द - जगती त्रिष्टुप्।

प्र ते महे विदथे शंसिषं हरी प्र ते वन्वे वनुषो हर्यतं मदम्।
घृतं न यो हरिभिश्चारु सेचत आ त्वा विशन्तु हरिवर्पसं गिरः ॥१॥

हे इन्द्रदेव ! तिम्रा दुवै घोडालाई यस महायज्ञमा हामी अर्चना गर्दछौँ। तिम्रा सेवा र प्रशंसा गर्न योग्य उत्साहको कामना गर्दछौँ। हरि नामका अश्वबाट इन्द्रदेव घिउले सेचन गर्दछन्। त्यस्तो मनोहारी इन्द्रदेवका समीप हाम्रो स्तुति पुगोस्।

हरिं हि योनिमभि ये समस्वरन्हिन्वन्तो हरी दिव्यं यथा सदः।
आ यं पृणन्ति हरिभिर्न धेनव इन्द्राय शूषं हरिवन्तमर्चत ॥२॥

हे ऋत्विक् हो ! द्रुतगतिका अश्वले इन्द्रलाई दिव्य धाममा पुऱ्याउँछन्। उस्तै स्तोत्रले अश्वझैँ यज्ञस्थलतर्फ पुऱ्याऊन्। अश्वसहितका इन्द्रदेवलाई हितकारी स्तुति गरौँ। गाईले दुध दिएझैँ हरियो आभासम्पन्न सोम र स्तुतिले इन्द्रदेवलाई तृप्त गरौँ।

सो अस्य वज्रो हरितो य आयसो हरिर्निकामो हरिरा गभस्त्योः।
द्युम्नी सुशिप्रो हरिमन्युसायक इन्द्रे नि रूपा हरिता मिमिक्षिरे ॥३॥

इन्द्रदेवको वज्र हरियो आभायुक्त र फलामे धातुले बनेको छ। त्यस वज्रलाई दुवै हातले उचाल्न मात्रै पनि गाहारो छ। सुन्दर च्यापुका वैभवशाली इन्द्रदेव रिसले मुर्मुरिँदै दुष्टलाई बाणले विनाश गर्छन्। हरियो आभासम्पन्न सोमले उनलाई सन्तुष्ट गराउँछ।

दिवि न केतुरधि धायि हर्यतो विव्यचद्वज्रो हरितो न रंह्या।
तुददहिं हरिशिप्रो य आयसः सहस्रशोका अभवद्धरिम्भरः ॥४॥

अन्तरिक्षमा सूर्यजस्तै कान्तिमान् वज्र प्रशंसनीय भएर व्याप्त रहन्छ। मानौं ऊ आफ्ना गतिले रथ वहन गर्ने अश्वह हो र सम्पूर्ण दिशा ओगट्छ। सुन्दर च्यापुले सोमरस पान गर्ने इन्द्रदेव वज्र नामका फलामे अस्त्रले वृत्रासुर नामको राक्षस वध गर्ने बेलामा असाधारण आभासम्पन्न भएका थिए।

त्वंत्वमहर्यथा उपस्तुतः पूर्वेभिरिन्द्र हरिकेश यज्वभिः।
त्वं हर्यसि तव विश्वमुक्थ्यमसामि राधो हरिजात हर्यतम् ॥५॥

हे हरिकेश, हे इन्द्रदेव ! उहिलेका ऋषि तिमीलाई यज्ञमै प्रार्थना गर्दथे र तिमी पनि यज्ञमै उपस्थित हुन्थ्यौ। हे सबैलाई मन पर्ने र प्रशंसायोग्य इन्द्रदेव ! तिम्रा सबै अन्न प्रशंसनीय छन्। तिमी कान्तिमान् र असाधारण विशेषताले सम्पन्न छौ।

ता वज्रिणं मन्दिनं स्तोम्यं मद इन्द्रं रथे वहतो हर्यता हरी।
पुरूण्यस्मै सवनानि हर्यत इन्द्राय सोमा हरयो दधिन्विरे ॥६॥

स्तुति गर्न योग्य र वज्रधारी इन्द्रदेव सोमरस पान गर्न हर्षित भएर अघि सर्दा दुई वटा सुन्दर हरियो वर्णका घोडा रथमा नारिएर उनलाई बोक्छन्। यज्ञमा कामनायोग्य इन्द्रका लागि अनेकौं पटक सोमरस पेल्ने गरिन्छ।

अरं कामाय हरयो दधन्विरे स्थिराय हिन्वन्हरयो हरी तुरा।
अर्वद्भिर्यो हरिभिर्जोषमीयते सो अस्य कामं हरिवन्तमानशे ॥७॥

इन्द्रदेवका लागि चाहिंदो मात्रामा सोमरस राखिएको छ। सोमरसले इन्द्रका अविचल घोडा यज्ञतर्फ वेगपूर्वक गतिमान हुन्छन्। गतिशील घोडाले रथ कुदाउँदै युद्धभूमितर्फ लगेझैं इन्द्रको मन पर्दो रथ सोमरसले सम्पन्न यज्ञमा लगेर प्रतिष्ठित गराउँछ।

हरिश्मशारुर्हरिकेश आयसस्तुरस्पेये यो हरिपा अवर्धत।
अर्वद्भिर्यो हरिभिर्वाजिनीवसुरति विश्वा दुरिता पारिषद्धरी ॥८॥

हरियो किरणरूपी दाहीजुँगा र कपाल भएका, भरणपोषण गर्ने, फलामजस्तै बलियो शरीर हुने इन्द्रदेव तीव्र हर्षित गराउने सोमरस पान गरेर उत्साहित हुन्छन्। उनी गतिशील अश्वले यज्ञमा पुग्दछन्। दुवै अश्व रथमा नारेर उनेल हाम्रा सबै विघ्न र बाधा निवारण गरून्।

स्रुवेव यस्य हरिणी विपेततुः शिप्रे वाजाय हरिणी दविध्वतः।
प्र यत्कृते चमसे मर्मृजद्धरी पीत्वा मदस्य हर्यतस्यान्धसः ॥९॥

इन्द्रदेवका दुई वटा हरियो वर्णका दीप्तिमान नेत्र यज्ञवेदीका दुई वटा स्रुवेजस्तै भएर विशिष्ट ढङ्गले सोमरसमा केन्द्रित रहन्छन्। उनका हरियो रङ्गका दुवै ओठ सोमपान गर्नका लागि कम्पायमान हुन्छन्। सफा गरिएका चमस पात्रमा भएको सुखदायक, उज्ज्वल सोमरस पिएर उनले आफ्ना दुवै अश्वको शरीर सफा पार्दछन्।

उत स्म सद्म हर्यतस्य पस्त्योः रत्यो न वाजं हरिवाँ अचिक्रदत्।
मही चिद्धि धिषणाहर्यदोजसा बृहद्वयो दधिषे हर्यतश्चिदा ॥१०॥

कान्तिमान् इन्द्रदेवको आवास द्यावापृथिवीमै छ। उनी रथमा आरुढ भएर घोडाझैं तीव्र वेगले समरक्षेत्रमा गमन गर्दछन्। हे इन्द्रदेव ! उत्कृष्ट स्तोत्रले प्रशंसा गर्दा तिमी आफ्नो सामर्थ्यअनुसार विपुल अन्न धारण गर्दछौ।

आ रोदसी हर्यमाणो महित्वा नव्यंनव्यं हर्यसि मन्म नु प्रियम्।
प्र पस्त्यमसुर हर्यतं गोराविष्कृधि हरये सूर्याय ॥११॥

हे इन्द्रदेव ! तिम्रा महत्ताले द्यावापृथिवी ओगट्दै नयाँ प्रिय स्तोत्र रोज्छौ। हे बलसम्पन्न इन्द्रदेव ! गाईरूपी पृथ्वी हर्षित गर्ने प्रेरक सूर्यका निम्ति आकाश प्रकट गर्छौ।

आ त्वा हर्यन्तं प्रयुजो जनानां रथे वहन्तु हरिशिप्रमिन्द्र।
पिबा यथा प्रतिभृतस्य मध्वो हर्यन्यज्ञं सधमादे दशोणिम् ॥१२॥

हे सुन्दर च्यापु भएका इन्द्रदेव ! तिम्रा अश्व रथमा जोतिएर मानिसले सम्पन्न गर्ने यज्ञमा तिमीलाई पुऱ्याऊन्। तिम्रा लागि प्रेमपूर्वक तयार गरिएको मधुर सोमरस पिऊ। दस औंलाले निचोरेको, यज्ञको साधनरूपी सोमरस युद्धमा विजय प्राप्त गर्नका लागि पिउने कामना गर।

अपाः पूर्वेषां हरिवः सुतानामथो इदं सवनं केवलं ते।
मममद्धि सोमं मधुमन्तमिन्द्र सत्रा वृषञ्जठर आ वृषस्व ॥१३॥

हे अश्वले युक्त इन्द्रदेव ! पहिले प्रातःकालीन यज्ञमा सोमरस दिँदा तिमीले ग्रहण गर्‍यौ र अहिले मध्याह्न कालीन सोमरस तिम्रा लागि पात्रमा प्रस्तुत छ। मिठो सोमरसले आनन्द प्राप्त गर्दै विशाल वर्षा गराउने हे इन्द्रदेव ! तिमी आफ्नो पेट सोमरसले भराऊ।

[सूक्त - ९७]

ऋषि - भिषक् आथर्वण। देवता - ओषधि समूह। छन्द - अनुष्टुप्।

या ओषधीः पूर्वा जाता देवेभ्यस्त्रियुगं पुरा।
मनै नु बभ्रूणामहं शतं धामानि सप्त च ॥१॥

सृष्टिका प्रारम्भमा देवताले उत्पन्न गरेका औषधि वसन्त, वर्षा र शरद् यी तीन ऋतुमा पाकेर पहेँला भए। ती औषधिका एक सय सात ठाउँका विषयमा हामीलाई थाहा छ।

शतं वो अम्ब धामानि सहस्रमुत वो रुहः।
अधा शतक्रत्वो यूयमिमं मे अगदं कृत ॥२॥

माताजस्तो पोषण गुणले सम्पन्न हे औषधि हो ! तिमीहरू प्रत्येकका सयौं किसिमका नाम र सहस्रौं वा असङ्ख्य अङ्कुर छन्। सयौं किसिमका कर्म सिद्ध गर्ने हे औषधि हो ! तिमीहरू सबैले हामीलाई आरोग्य प्रदान गर।

ओषधीः प्रतिमोदध्वं पुष्पवतीः प्रसूवरीः।
अश्वाइव सजित्वरीर्वीरुधः पारयिष्ण्वः ॥३॥

हे औषधि हो ! वेगशाली घोडाझैं भएर तिमीहरूले शत्रुजस्ता अनेकौं रोग नष्ट गर्‍यौ। फूलसहित र फल उत्पादन गर्ने गुणसम्पन्न हुँदै हाम्रा लागि आनन्ददायक होओ।

ओषधीरिति मातरस्तद्वो देवीरुप ब्रुवे।
सनेयमश्वं गां वास आत्मानं तव पूरुष ॥४॥

हे औषधि हो ! तिमीहरू माताजस्तै पालनशक्तिले युक्त, दिव्य गुणले सम्पन्न छौ। तिमीहरूका यस्ता गुणको हामीले प्रशंसा गर्दा स्वीकार गर। हे पुरुष ! गाई, घोडा, वस्त्र र म स्वयं तिम्रा लागि समर्पित छु।

अश्वत्थे वो निषदनं पर्णे वो वसतिष्कृता।
गोभाज इत्किलासथ यत्सनवथ पूरुषम् ॥५॥

पिपल र पलाशजस्ता वृक्षमा निवास गर्ने हे औषधि हो ! तिमीहरू यजमानलाई जीवनशक्ति प्रदान गरेर उसमाथि कृपा गर्दछौ। त्यसै कारणले तिमीहरू विशेष रूपमा कृपाका पात्र बनेका छौ।

यत्रौषधीः समग्मत राजानः समिताविव।
विप्रः स उच्यते भिषग्रक्षोहामीवचातनः ॥६॥

लडाइँमा राजाहरू जम्मा भएझैं जोसित औषधि जम्मा हुन्छन्, ती ज्ञानवान् पुरुषलाई चिकित्सक भनिन्छ। उनैले दुखाइपिराइ र रोगव्याध निको पार्दछन्।

अश्वावतीं सोमावतीमूर्जयन्तीमुदोजसम्।
आवित्सि सर्वा ओषधीरस्मा अरिष्टतातये ॥७॥

यी यजमानको रोग हटाउनका लागि अश्वावती नामको बलप्रदायक, सोमवती नामको शान्तिदायक, ऊर्जवन्ती नामको उर्जाप्रदायक, उदोजस् नामको ओज र पोषणप्रदायक आदि सबै खालका औषधिका दिव्य गुणसँग हामी राम्ररी परिचित छौं।

उच्छुष्मा ओषधीनां गावो गोष्ठादिवेरते।
धनं सनिष्यन्तीनामात्मानं तव पूरुष ॥८॥

गोठबाट गाई निस्केर छरिएझैं यज्ञका प्रभावले औषधिको सामर्थ्य वायुमण्डलमा फैलिन्छ। हे पुरुष ! औषधिले तिमीलाई स्वास्थ्यरूपी सम्पदा प्रदान गर्छ।

इष्कृतिर्नाम वो माताथो यूयं स्थ निष्कृतीः।
सीराः पतत्रिणीः स्थन यदामयति निष्कृथ ॥९॥

हे औषधि हो ! तिमीहरू विकृति हटाउने, माताजस्तै निष्कृति अर्थात् रोगनिवारण गर्ने हौ। भोक मेटाउने अन्नझैं तिमीहरू मानसिको रोग हटाइदेओ।

**अति विश्वाः परिष्ठाः स्तेनइव व्रजमक्रमुः ।**
**ओषधीः प्राचुच्यवुर्यत्कि च तन्वो३ रपः ॥१०॥**

चोरले गाईका बथानमा आक्रमण गरेझैँ आफ्ना गुणले सर्वत्र व्याप्त हुन पुगेका औषधिले रोगका समूहमा आक्रमण गर्दछन् र शरीरका समस्त विकृति आफ्ना आरोग्यवर्द्धक सामर्थ्यले हटाइदिन्छन् ।

**यदिमा वाजयन्नहमोषधीर्हस्त आदधे ।**
**आत्मा यक्ष्मस्य नश्यति पुरा जीवगृभो यथा ॥११॥**

विशेष शक्तिले सम्पन्न औषधिको सेवन गर्नका लागि हामीले हातमा लिंदा राजयक्ष्माजस्तो भयानक रोग पनि आफूलाई नाश भएको मान्दछ। त्यस रोगको सोचाइ वधशाला पुग्नुभन्दा अघि नै वधशालातिर लगिँदै गरेका प्राणीले आफूलाई मरिसकेको ठानेझैँ हुन्छ।

**यस्यौषधीः प्रसर्पथाङ्गमङ्गं परुष्परुः ।**
**ततो यक्ष्मं वि बाधध्व उग्रो मध्यमशीरिव ॥१२॥**

हे औषधि हो ! तिमीहरू रोगी मानिसका अङ्गप्रत्यङ्गमा पूर्ण रूपले समाहित हुँदा वीर पुरुषले शत्रुको मर्मस्थलमा प्रहार गरेझैँ यक्ष्म आदि सबै शारीरिक रोग निर्मूल गर्दछौ।

**साकं यक्ष्म प्र पत चाषेण किकिदीविना ।**
**साकं वातस्य ध्राज्या साकं नश्य निहाकया ॥१३॥**

हे शरीरमा लागिसकेका यक्ष्म रोग ! तिमी चाँडै नीलकण्ठ, मयुर आदि चरा र वायुझैँ वेगले यहाँबाट भाग र गोही आदि हिंस्रक पशुकहाँ पुगेर विनाश होऊ।

**अन्या वो अन्यामवत्यन्यान्यस्या उपावत ।**
**ताः सर्वाः संविदाना इदं मे प्रावता वचः ॥१४॥**

हे औषधि हो ! तिमीहरू एकापसमा प्रभाव वृद्धि गराओ। प्रयोग गरिएका औषधि अरू औषधिका नजिक आओ र तिनले अरू औषधिसित निकटता बढाओ। सबै औषधिले एकापसमा सहयोगी भावनाको परिचय दिँदै हाम्रो निवेदन स्वीकार गर।

**याः फलिनीर्या अफला अपुष्पा याश्च पुष्पिणीः ।**
**बृहस्पतिप्रसूतास्ता नो मुञ्चन्त्वंहसः ॥१५॥**

फल भरिएका, फल नलागेका, फूल फुलेका, फूल नभएका सबै औषधि बृहस्पति नामका विशेष वैद्यबाट प्रयुक्त भएर हामीलाई रोगबाट मुक्ति दिलाऊन्।

**मुञ्चन्तु मा शपथ्याऽदथो वरुण्यादुत ।**
**अथो यमस्य पड्बीशात्सर्वस्माद्देवकिल्बिषात् ॥१६॥**

हे औषधि हो ! तिमीहरू कुपोषणबाट उब्जेका रोग अथवा निन्दित कुकृत्यबाट उत्पन्न रोग, वरुणको पाश अथवा यमको बन्धनरूपी रोग, पापकृत्य र दैवी अनुशासनको पालन नगर्नाले लागेका सबै रोगबाट हामीलाई मुक्त गराओ।

**अवपतन्तीरवदन्दिव ओषधयस्परि ।**
**यं जीवमश्नवामहै न स रिष्याति पूरुषः ॥१७॥**

दिव्यलोकबाट प्राणका रूपमा धर्तीमा आउने औषधिले हामीलाई आश्वासन दिन्छन् कि जुन प्राणीमाथि हाम्रो कृपा हुन्छ, त्यसले आरोग्य लाभ गरेर कृतार्थ हुँदै समयभन्दा पहिले कहिल्यै त्यो मृत्युका मुखमा पर्दैन।

**या ओषधीः सोमराज्ञीर्बह्वीः शतविचक्षणाः ।**
**तासां त्वमस्युत्तमारं कामाय शं हृदे ॥१८॥**

औषधिका अधिष्ठाता सोम हुन्। उनी सयौं किसिमका रोग निर्मूल गर्न सक्षम छन्। हे सबैका बीचमा रहने औषधि ! तिमी श्रेष्ठ गुणले युक्त छौ। तिमी अभीष्ट सुख प्राप्त हृदयलाई शक्ति दिनमा पूर्ण सक्षम छौ।

**या ओषधीः सोमराज्ञीर्विष्ठिताः पृथिवीमनु ।**
**बृहस्पतिप्रसूता अस्यै सं दत्त वीर्यम् ॥१९॥**

विभिन्न रूपमा धर्तीमा विद्यमान सोमजस्ता विशिष्ट गुणले सम्पन्न विभिन्न खालका औषधि बृहस्पतिद्वारा तयार गरेर सेवन गर्न दिइँदा तिनले यी पुरुषलाई ओजस्वी र वीर्यवान् बनाऊन्।

मा वो रिषत्खनिता यस्मै चाहं खनामि वः।
द्विपच्चतुष्पदस्माकं सर्वमस्त्वनातुरम् ॥२०॥

हे औषधि ! तिमीलाई खनेर निकाल्ने मानिस खनेका दोषबाट सर्वथा मुक्त रहून् र जुन रोगको उपचारका लागि तिमीलाई खनेर निकालिएको हुन्छ, त्यो पनि दोषमुक्त होस्। हाम्रा स्त्री, पुत्र आदि आफन्त र गाई आदि पशु सबै निरोगी हुन पाऊन्।

याश्चेदमुपशृण्वन्ति याश्च दूरं परागताः।
सर्वाः सङ्गत्य वीरुधोऽस्यै सं दत्त वीर्यम् ॥२१॥

औषधिका सम्पर्कमा रहेका वा निकै दुर्गम क्षेत्रमा रहे पनि सम्पर्कमा हुने बोटबिरुवा, विभिन्न रूपमा उम्रिएर हाम्रो प्रार्थना सुन्ने सबै औषधिका पारस्परिक सहयोगले यो मानिसलाई शक्ति र ओजले परिपूर्ण गराओस्।

ओषधयः सं वदन्ते सोमेन सह राज्ञा।
यस्मै कृणोति ब्राह्मणस्तं राजन् पारयामसि ॥२२॥

हे राजा सोम ! रोगीको रोग हटाउनका लागि चिकित्सा विशेषज्ञले हाम्रो जरो, गानो, फल, पात आदि टिप्छन्। हामी आरोग्य प्रदान गर्दछौं भनेर आफ्ना स्वामी सोमसित औषधिहरू भन्दछन्।

त्वमुत्तमास्योषधे तव वृक्षा उपस्तयः।
उपस्तिरस्तु सो३ऽस्माकं यो अस्माँ अभिदासति ॥२३॥

हे औषधि ! तिमी उत्तम छौ। सबै बोटबिरुवा तिमीभन्दा कनिष्ठ छन्। जसले हाम्रो विनाश गर्न खोज्दछन्, तिनीहरू पनि हाम्रै अधीनमा रहून्।

[सूक्त - ९८]

ऋषि - देवापि आर्ष्टिषेण। देवता - देवगण। छन्द - त्रिष्टुप्।

बृहस्पते प्रति मे देवतामिहि मित्रो वा यद्वरुणो वासि पूषा।
आदित्यैर्वा यद्वसुभिर्मरुत्वान्त्स पर्जन्यं शन्तनवे वृषाय ॥१॥

हे बृहस्पतिदेव ! हाम्रा लागि प्रत्येक देवताकहाँ गएर तिमी मित्र हौ, तिमी वरुण हौ, तिमी पूषा हौ, त्यसैले मरुत्‌हरूसँगै शन्तनुका लागि जलको वर्षा गराओ भन।

आ देवो दूतो अजिरश्चिकित्वान्त्वद्देवापे अभि मामगच्छत्।
प्रतीचीनः प्रति मामा ववृत्स्व दधामि ते द्युमतीं वाचमासन् ॥२॥

हे देवापि ! तिमीकहाँबाट कुनै ज्ञानवान् र तीव्रगामी देवता दूत बनेर हामीकहाँ आऊन्। हे बृहस्पतिदेव ! तिमी सबै विषयबाट विमुख भएर हाम्रा नजिक आऊ। तिम्रो सेवाका लागि हामी तेजस्वी स्तोत्र समर्पित गर्दछौं।

अस्मे धेहि द्युमतीं वाचमासन् बृहस्पते अनमीवामिषिराम्।
यया वृष्टिं शन्तनवे वनाव दिवो द्रप्सो मधुमाँ आ विवेश ॥३॥

हे बृहस्पतिदेव ! हाम्रा मुखमा स्पष्ट, ओजस्वी र तेजस्वी वाणी प्रदान गर। वाणीले नै शन्तनु जलवर्षा गर्नमा प्रेरित गरुन्। आकाशबाट मधुररसयुक्त वर्षा प्रवेश गरोस्।

आ नो द्रप्सा मधुमन्तो विशन्त्विन्द्र देह्यधिरथं सहस्रम्।
नि षीद होत्रमृतुथा यजस्व देवान्देवापे हविषा सपर्य ॥४॥

हामीलाई मधुरतायुक्त वर्षाको रस उपलब्ध होस्। हे इन्द्रदेव ! रथमा राखिएको प्रचुर ऐश्वर्य हामीलाई देऊ। हे देवापि ! तिमी यस यज्ञीय कार्यमा आएर विराजमान होऊ। यथासम्भव देवताको अर्चना गर र हविष्यान्न दिएर सन्तुष्ट गराऊ।

आर्ष्टिषेणो होत्रमृषिर्निषीदन् देवापिर्देवसुमतिं चिकित्वान्।
स उत्तरस्मादधरं समुद्रमपो दिव्या असृजद्वर्ष्या अभि ॥५॥

आर्ष्टिषेणका पुत्र देवापि, स्तुतिका ज्ञाता हुनाले यज्ञकार्यका लागि विराजमान छन्। उनले अन्तरिक्षमाथिबाट समुद्रमुनिका भूलोकमा रहेका समुद्रमा दिव्यतायुक्त वर्षाको जल प्रदान गरुन्।

अस्मिन्त्समुद्रे अध्युत्तरस्मिन्नापो देवेभिर्निवृता अतिष्ठन्।
ता अद्रवन्नार्ष्टिषेणेन सृष्टा देवापिना प्रेषिता मृक्षिणीषु ॥६॥

भूमिमा रहेका समुद्रमा अन्तरिक्षमा रहेका समुद्र प्रदेशका देवताले आवरणयुक्त जल स्थापित गरेका

छन्। आर्ष्टिषेण देवापिले त्यो जल गतिमान बनाए। त्यसो भएपछि नै त्यो पानी भूमिमा वर्षाका रूपमा बर्सन थाल्दछ।

**यद्देवापिः शन्तनवे पुरोहितो होत्राय वृतः कृपयन्नदीधेत्।**
**देवश्रुतं वृष्टिवनिं रराणो बृहस्पतिर्वाचमस्मा अयच्छत् ॥७॥**

शन्तनुमाथि कृपादृष्टि गरेर पुरोहित देवापि यज्ञकर्म गर्न तयार भएर देवप्रख्यात र जल- उत्पादक बृहस्पतिदेवलाई स्तुति गर्न लागेका बेला प्रशंसित भएर बृहस्पतिदेवले उनका मनमा नयाँ सूत्रका रूपमा स्तोत्र उदित गराए।

**यं त्वा देवापिः शुशुचानो अग्न आर्ष्टिषेणो मनुष्यः समीधे।**
**विश्वेभिर्देवैरनुमद्यमानः प्र पर्जन्यमीरया वृष्टिमन्तम् ॥८॥**

हे अग्निदेव ! आर्ष्टिषेणका पुत्र देवापिले पवित्र भएर स्तोत्र गाएर उत्तम विधिले तिमीलाई प्रदीप्त गरेका थिए। सम्पूर्ण देवताको सहायता प्राप्त गरेर तिमी जलको वर्षा गराउन बादललाई प्रेरित गर।

**त्वां पूर्व ऋषयो गीर्भिरायन्त्वामध्वरेषु पुरुहूत विश्वे।**
**सहस्राण्यधिरथान्यस्मे आ नो यज्ञं रोहिदश्वोप याहि ॥९॥**

हे अग्निदेव ! उहिलेका ऋषि स्तोत्रका साथ तिमीकहाँ उपस्थित भएका थिए। हे असङ्ख्य तिरबाट आह्वान गरिने अग्निदेव ! सबै यजमान अहिले यज्ञमा स्तोत्रले तिम्रै नजिक आउँछन्। रथले सम्पन्न असङ्ख्य ऐश्वर्य सम्पदा शन्तनु राजाले भेटीका रूपमा प्रदान गरे। हे रोहित अश्व भएका अग्निदेव ! हाम्रा यज्ञमा विराजमान होऊ।

**एतान्यग्ने नवतिर्नव त्वे आहुतान्यधिरथा सहस्रा।**
**तेभिर्वर्धस्व तन्वः शूर पूर्वीर्दिवो नो वृष्टिमिषितो रिरीहि ॥१०॥**

हे वीर अग्निदेव ! रथसँगै उनान्सय हजार पदार्थ आहुतिका रूपमा तिमीलाई चढाएका छौं। तिनबाट तिमी आफ्ना विभिन्न रूप संवर्द्धित गराएर प्रज्वलित गर। हामीले प्रार्थना गरिसकेपछि तिमी दिव्यलोकमा वर्षा गराऊ।

**एतान्यग्ने नवतिं सहस्रा सं प्र यच्छ इन्द्राय भागम्।**
**विद्वान्पथ ऋतुशो देवयानानप्यौलानं दिवि देवेषु धेहि ॥११॥**

हे अग्निदेव ! नब्बे हजार आहुतिमध्ये जलको वर्षा गराउने इन्द्रदेवलाई खुसी पार्नका लागि उनको भाग प्रदान गर। देवयानको मार्ग चिनेका र उचित समयमा यज्ञ गर्ने शन्तनुलाई देवताका बीचमा विराजमान गराऊ।

**अग्ने बाधस्व वि मृधो वि दुर्गहापामीवामप रक्षांसि सेध।**
**अस्मात्समुद्राद् बृहतो दिवो नोऽपां भूमानमुप नः सृजेह ॥१२॥**

हे अग्निदेव ! तिमी शत्रुका दुर्गम नगर विनाश गर र रोग तथा राक्षसी शक्ति रोक। यस विशाल अन्तरिक्षरूपी सागर र आकाशबाट हाम्रा पृथ्वीमा अथाह जलराशि प्रदान गर।

**[सूक्त - ९९]**

**ऋषि - वम्र वैखानस। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।**

**कं नश्चित्रमिषण्यसि चिकित्वान्पृथुग्मानं वाश्रं वावृधध्यै।**
**कत्तस्य दातु शवसो व्युष्टौ तक्षद्वज्रं वृत्रतुरमपिन्वत् ॥१॥**

हे इन्द्रदेव ! ज्ञानसम्पन्न बनेर निरन्तर वर्द्धनशील, विलक्षण, प्रशंसनीय र कल्याणकारी सम्पदा हाम्रो प्रगतिका लागि दिन्छौ। इन्द्रदेवको पराक्रमी सामर्थ्य वृद्धि गराउन हामीले के गर्नुपर्ला ? उनका लागि वृत्रसंहारक वज्रास्त्र रचना गरिएको छ। उनैबाट जलको वर्षा गरेर संसारमा सेचन गरिन्छ।

**स हि द्युता विद्युता वेति साम पृथुं योनिमसुरत्वा ससाद।**
**स सनीळेभिः प्रसहानो अस्य भ्रातुर्न ऋते सप्तथस्य माया ॥२॥**

इन्द्रदेव दीप्तिमान् विद्युत् नामको आयुध लिएर यज्ञमा सामगान सुन्न आउँछन्, बलले सम्पन्न भएर अनेकौं स्थानमा आधिपत्य स्थापित गर्दछन् र विमानमा विराजमान मरुत्हरूसँगै शत्रु पराजित गर्दछन्। आदित्यगणका सातौं भाइ इन्द्रदेवविना कुनै कार्य गर्न सकिँदैन।

स वाजं यातापदुष्पदा यन्त्स्वर्षाता परि षदत्सनिष्यन्।
अनर्वा यच्छतदुरस्य वेदो घ्नञ्छिश्नदेवाँ अभि वर्पसा भूत ॥३॥

उनी उत्तम वेगले गएर लडाइँका मैदानमा पुग्दछन्, अविचलित हुँदै सयौं ढोका भएका शत्रुको सहरमा भएजति धन आफ्नै बलले ल्याउँछन् र इन्द्रिय लिप्सामा लाग्नेलाई नष्ट गराउँछन्।

स यह्व्यो३ऽवनीर्गोष्वर्वा जुहोति प्रधन्यासु सस्निः।
अपादो यत्र युज्यासोऽरथा द्रोण्यश्वास ईरते घृतं वाः ॥४॥

उनी मेघतिर गतिमान भएर मेघभित्रै भ्रमण गर्दै उब्जाउ भूमिमा मनग्गे जलको वर्षा गराउँछन्, जलसम्पन्न स्थानमा अनेकौं सानातिना नदी एकत्र भएर घिउजस्तै जल प्रवाहित गराउँछन्। गोडा र रथ आदि नै नभए पनि उनी बसिरहँदैनन्।

स रुद्रेभिरशस्तवार ऋभ्वा हित्वी गयमारेअवद्य आगात्।
वम्रस्य मन्ये मिथुना विवव्री अन्नमभीत्यारोदयन्मुषायन् ॥५॥

इन्द्रदेव प्रार्थनाविना नै मनोकामना पूरा गराउने, महिमाले सम्पन्न र निन्दारहित छन्। उनी आफ्ना स्थानबाट रुद्रपुत्र मरुत्हरूसँगै यहाँ आऊन्। वम्रका मातापिताको कष्ट मेटियो, किनभने म वम्रले शत्रुको ऐश्वर्य हरण गर्दै शत्रुलाई सताएको छु।

स इद्दासं तुवीरवं पतिर्दन्षडक्षं त्रिशीर्षाणं दमन्यत्।
अस्य त्रितो न्वोजसा वृधानो विपा वराहमयोअग्रया हन् ॥६॥

सबैभन्दा ठूला ईश्वर इन्द्रले अति गर्जनशील दुष्ट दस्यु दमन गरेका थिए। उनले छ वटा आँखाले युक्त र तीन वटा टाउका भएका त्वष्टाका पुत्र विश्वरूपलाई हनन गरेका थिए। इन्द्रदेवको तेजस्विताले तेजस्वी भएर त्रित नामका ऋषिले फलामजस्तै बलिया र तिखा नङ भएका औंलाले वराह भन्ने राक्षस वध गरेका थिए।

स द्रुह्वणे मनुष ऊर्ध्वसान आ साविषदर्शसानाय शरुम्।
स नृतमो नहुषोऽस्मत्सुजातः पुरोऽभिनदर्हन्दस्युहत्ये ॥७॥

भक्तमाथि आक्रमण भएको देखेर इन्द्रले अभिमानपूर्वक शरीर विस्तार गराउँदै शत्रुको संहार गर्ने घातक अस्त्र प्रदान गर्छन्। उनी मानिसका सबैभन्दा गतिला नायक हुन्। दुष्टको संहार गर्ने बेलामा श्रेष्ठ कुलमा उत्पन्न इन्द्रदेवले शत्रुका अनेकौं नगर ध्वस्त गराएका थिए।

सो अभ्रियो न यवस उदन्यन्क्षयाय गातुं विदन्नो अस्मे।
उप यत्सीददिन्दुं शरीरैः श्येनोऽयोपाष्टिर्हन्ति दस्यून् ॥८॥

उनी अन्न आदिको पुष्टिका लागि मेघको समूहझैं भूमिमा जल बर्साउँछन् र हाम्रा घरको बाटो प्रशस्त गराउँछन्। उनी आफ्ना शरीरका सबै अङ्गले सोम वर्षा गरेर गरुड पक्षीझैं फलामको जस्तो तिखो र बलियो अङ्गले शत्रु संहार गर्दछन्।

स व्राधतः शवसानेभिरस्य कुत्साय शुष्णं कृपणे परादात्।
अयं कविमनयच्छस्यमानमत्कं यो अस्य सनितोत नृणाम् ॥९॥

इन्द्रदेव पराक्रमशाली शस्त्रले दुर्धर्ष शत्रु पर भगाउँछन्। उनले कुत्सको स्तोत्र सुनेर शुष्ण नामको राक्षस संहार गरेका थिए। उनैले स्तोता र क्रान्तदर्शी उशनाका विद्रोही वशीभूत गराएका थिए। उनै उशनाले इन्द्रदेवको विस्तृत स्वरूप र इन्द्रदेवका अनुचर मरुत्हरूलाई पनि चिनेका थिए।

अयं दशस्यन्नर्येभिरस्य दस्मो देवेभिर्वरुणो न मायी।
अयं कनीन ऋतुपा अवेद्यमिमीताररुं यश्चतुष्पात् ॥१०॥

मानिसका शुभचिन्तक मरुत्हरूसँगै निवास गर्ने इन्द्रदेव, स्तोतालाई धन प्रदान गर्दछन् र सबै दुष्ट संहार गर्दछन्। उनी वरुणको जस्तै तेजले सुन्दर र बलवान् छन्। यी कान्तिमान् र सधैं सबैका संरक्षक हुन् भनेर चिनिन्छन्। उनैले चार पदले युक्त शत्रु संहार गरेका थिए।

अस्य स्तोमेभिरौशिज ऋजिश्वा व्रजं दरयद्वृषभेण पिप्रोः।
सुत्वा यद्यजतो दीदयद्गीः पुर इयानो अभि वर्पसा भूत् ॥११॥

औशिज, ऋजिश्वा, पिप्रुका गोरुको बथान यिनै प्रभुको स्तुति गर्नाले बिथोलियो। शत्रुका सहर यिनले नष्ट गर्दछन्।

एवा महो असुर वक्षथाय वम्रकः पड्भिरुप सर्पदिन्द्रम्।
स इयानः करति स्वस्तिमस्मा इषमूर्जं सुक्षितिं विश्वमाभाः ॥१२॥

हे इन्द्रदेव ! म वम्र यसै किसिमले विपुल हवि प्रदान गर्ने कामनाले तिम्रा सामु आएको छु। नजिक आउने साधकको भलो गर्ने उद्देश्यले अन्न, बल र आवास प्रदान गर।

[सूक्त - १००]

ऋषि - दुवस्यु वान्दन। देवता - विश्वेदेवा। छन्द - जगती त्रिष्टुप्।

इन्द्र दृह्य मघवन्त्वावदिद्भुज इह स्तुतः सुतपाबोधि नो वृधे।
देवेभिर्नः सविता प्रावतु श्रुतमा सर्वतातिमदितिं वृणीमहे ॥१॥

हे वैभवशाली इन्द्रदेव ! तिमी आफूजस्तै शक्तिशाली शत्रुका सैनिक संहार गर। यस यज्ञमा स्तोत्र प्राप्त गरेर र सोमरस पान गरेर तिमी हाम्रो संरक्षणका लागि सधैं तयार रहिदेऊ। देवताहरूसँगै सवितादेवले हाम्रो प्रख्यात यज्ञ सुरक्षा गरुन्। सबैलाई उत्पादन गर्ने देवी अदितिलाई हामी स्तुति गर्दछौं।

भराय सु भरत भागमृत्वियं प्र वायवे शुचिपे क्रन्ददिष्टये।
गौरस्य यः पयसः पीतिमानश आ सर्वतातिमदितिं वृणीमहे ॥२॥

सबैको पालनपोषण गर्ने इन्द्रदेवलाई ऋतुअनुसार यज्ञको भाग प्रदान गरौं। शुद्ध अन्न उपभोग गर्ने र शीघ्रगमनका समयमा ध्वनि उत्पन्न गर्ने वायुदेवका निम्ति यज्ञीय भाग प्रदान गरौं। उनी गाईको शुद्ध, पवित्र र पौष्टिक दुध पान गर्छन्। सबैलाई उत्पादन गर्ने अदितिदेवीलाई हामी प्रार्थना गर्दछौं।

आ नो देवः सविता साविषद्वय ऋजुयते यजमानाय सुन्वते।
यथा देवान्प्रतिभूषेम पाकवदा सर्वतातिमदितिं वृणीमहे ॥३॥

सर्वप्रेरक सवितादेव हामीलाई सोझो तथा छोटो मार्गमा प्रेरणा दिऊन् र सोमयाग गर्ने यजमानलाई परिपक्व अन्न प्रदान गरुन्। त्यसबाट हामी देवतालाई सन्तुष्टि दिनुका साथै विभूषित गर्न सकौं। सबैलाई कल्याण गर्ने देवी अदितिलाई हामी स्तुति गर्दछौं।

इन्द्रो अस्मे सुमना अस्तु विश्वह राजा सोमः सुवितस्याध्येतु नः।
यथायथा मित्रधितानि संदधुरा सर्वतातिमदितिं वृणीमहे ॥४॥

इन्द्रदेव हामीसित सधैं खुसी रहून्। हाम्रा यज्ञमा राजा सोमले हाम्रो स्तोत्र पाठ सुनून्। त्यसबाट सबैका मित्रजस्ता इन्द्रदेवले प्रदान गरेको प्रिय धन उपलब्ध होस्। सबैलाई प्रेरित गर्ने अदितिदेवीलाई हामी प्रार्थना गर्दछौं।

इन्द्र उक्थेन शवसा परुर्दधे बृहस्पते प्रतरीतास्यायुषः।
यज्ञो मनुः प्रमतिर्नः पिता हिकमा सर्वतातिमदितिं वृणीमहे ॥५॥

इन्द्रदेव स्तुत्य सामर्थ्यले हाम्रा यज्ञको सुरक्षा गर्दछन्। हे आयु बढाउने बृहस्पति ! असल विचार भएका, बुद्धिमान् र यज्ञका पालकले हामीलाई सुख प्रदान गरुन्। उत्पादन गर्ने अदितिदेवीलाई हामी सबैले प्रार्थना गर्दछौं।

इन्द्रस्य नु सुकृतं दैव्य सहोऽग्निर्गृहे जरिता मेधिरः कविः।
यज्ञश्च भूद्विदथे चारुरन्तम आ सर्वतातिमदितिं वृणीमहे ॥६॥

देवताको शक्ति इन्द्रदेवले नै बनाएका हुन्। घरमा रहेका अग्निदेव, देवताको प्रार्थना गर्दछन् र यज्ञ सम्पन्न गराउँदै कार्य सम्पादन गर्दछन्। उनी देवताका लागि स्तुत्य, ज्ञानवान्, क्रान्तदर्शी र पूज्य छन्। उनै यजनीय र रमणी अग्निदेव हाम्रा नजिक रहिदिऊन्। हामी सर्वप्रेरक अदितिदेवीलाई प्रार्थना गर्दछौं।

न वो गुहा चकृम भूरि दुष्कृतं नाविष्ट्यं वसवो देवहेडनम्।
माकिर्नो देवा अनृतस्य वर्पस आ सर्वतातिमदितिं वृणीमहे ॥७॥

हे वसुदेवता हो ! तिमीहरूको परोक्ष दृष्टिमा पनि हाम्रो कुनै पाप लुक्न सकेको छैन। तिमीहरूका अगाडि हामीले देवताका क्रोधको सिकार हुनुपर्ने गरी कुनै दुष्कृत्य गरेका छैनौं। हे सर्वव्यापक देवता हो ! हामीलाई मरणशील शरीर प्राप्त नहोस्। हामी सर्वोत्पादक अदितिदेवीलाई प्रार्थना गर्दछौं।

अपामीवां सविता साविषन्न्य१ग्वरीय इदप सेधन्त्वद्रयः।
ग्रावा यत्र मधुषुदुच्यते बृहदा सर्वतातिमदितिं वृणीमहे ॥८॥

सबैका प्रेरणादायक सवितादेवले हाम्रा दुःखदायी रोग निवारण गरुन्। उदार पर्वतका अधिष्ठाता देवताले अति विशाल पापरूपी अनर्थ हटाइदिऊन्। मधुजस्तो सोमरस प्रस्तुत गर्न पेल्ने ढुङ्गाको स्तुति उचित किसिमले गरिने ठाउँमा सबैले कल्याणकारिणी अदितिदेवीलाई प्रार्थना गर्दछौं।

ऊर्ध्वो ग्रावा वसवोऽस्तु सोतरि विश्वा द्वेषांसि सनुतर्युयोत।
स नो देवः सविता पायुरीड्य आ सर्वतातिमदितिं वृणीमहे ॥९॥

हे वसु हो ! सोम पेल्न प्रयोग गरिएका ढुङ्गा उँभोतिर लाग्ने होऊन्। हाम्रा लुकेर बसेका शत्रु मेटाइदेऊ। सवितादेव हाम्रा पालनकर्ता, नमनीय र स्तुतिका लागि योग्य छन्। सबैलाई उत्पादन गर्ने अदितिदेवीलाई हामी सबैले स्तुति गर्दछौं।

ऊर्जं गावो यवसे पीवो अत्तन ऋतस्य याः सदने कोशे अङ्ध्वे।
तनूरेव तन्वो अस्तु भेषजमा सर्वतातिमदितिं वृणीमहे ॥१०॥

हे गाई हो ! तिमीहरू देखिएका चहुरमा घुम्दै घाँस खाएर बलिया होओ र पौष्टिक दुधरूपी रस प्रदान गर। यज्ञवेदी र गोठमा रहेको घाँस पनि खाओ। तिमीहरूको दुध सोमरसको औषधिजत्तिकै हाम्रा लागि पुष्टिदायक होस्। हामी सबैलाई प्रेरित गर्ने अदितिदेवीलाई प्रार्थना गर्दछौं।

क्रतुप्रावा जरिता शश्वतामव इन्द्र इद्भद्रा प्रमतिः सुतावताम्।
पूर्णमूधर्दिव्यं यस्य सिक्तय आ सर्वतातिमदितिं वृणीमहे ॥११॥

सम्पूर्ण कर्म पूर्ति गर्ने, सबैको प्रशंसा गर्ने र समयको गतिअनुसार सबैलाई बुढ्याएर मार्ने इन्द्रदेव सोमरस पेल्नेहरूका संरक्षक र प्रशंसनीय छन्। उनले पान गर्ने सोम कलशमा भरिएको हुन्छ। हामी सर्वप्रेरक अदितिदेवीलाई प्रार्थना गर्दछौं।

चित्रस्ते भानुः क्रतुप्रा अभिष्टिः सन्ति स्पृधो जरिणप्रा अधृष्टाः।
रजिष्ठया रज्या पश्व आ गोस्तूतूर्षति पर्यग्रं दुवस्युः ॥१२॥

हे इन्द्रदेव ! तिम्रो प्रकाश विलक्षण छ। तिमी हाम्रा कर्म पूर्ण गराउने र सबैका साध्य हौ। तिम्रो अभिलाषा स्तोता यजमानको मनोकामना पूर्ति गराउने हो र दबाव नभएको छ। दुवस्यु ऋषिका सरल डोरीले गाई अगाडि छिटोछिटो तानिएझैं हामी पनि तिमीतिर तानिएका छौं।

## [सूक्त - १०१]

ऋषि - बुध सौम्य। देवता - विश्वेदेवा ऋत्विग्गण। छन्द - त्रिष्टुप् गायत्री बृहती।

उद्बुध्यध्वं समनसः सखायः समग्निमिन्ध्वं बहवः सनीडाः।
दधिक्रामग्निमुषसं च देवीमिन्द्रावतोऽवसे नि ह्वये वः ॥१॥

हे ऋत्विक् मित्र हो ! तिमीहरू एकाग्र चित्त भएर, एकै ठाउँमा जम्मा भएर, एकै ठाउँमा निवास गर्दै अग्नि प्रदीप्त गराओ। हामी इन्द्रदेवका साथै दधिक्रा, अग्नि र उषादेवीलाई तिमीहरूको सुरक्षाका लागि आह्वान गर्दछौं।

मन्द्रा कृणुध्वं धिय आ तनुध्वं नावमरित्रपरणीं कृणुध्वम्।
इष्कृणुध्वमायुधारं कृणुध्वं प्राञ्चं यज्ञं प्र णयता सखायः ॥२॥

हे ऋत्विक् मित्र हो ! आनन्ददायी स्तोत्र उच्चारण गर। असल कामको विकास गर। पार लगाउने हलोरूपी नौका बनाओ। अनेकौं किसिमका धेरै शस्त्रास्त्र राम्ररी बनाओ। यसै किसिमले तिमीहरू सत्कर्मरूपी यज्ञको अनुष्ठान सम्पन्न गर।

युनक्त सीरा वि युगा तनुध्वं कृते योनो वपतेह बीजम्।
गिरा च श्रुष्टिः सभरा असन्नो नेदीय इत्सृण्यः पक्वमेयात् ॥३॥

हे ऋत्विक् हो ! हलो आदि खेतीका हतियार व्यवस्थित गरेर गोरुका काँधमा जुवा राखेर खेत जोत। तयार गरिएका खेतमा बिउ छर र कृषिविज्ञानअन्तर्गत बालीका अनेकौं उत्तम प्रजाति विकास गर। चाँडै काट्न सकिने पाकेको अन्न प्राप्त होस्।

सीरा युञ्जन्ति कवयो युगा वि तन्वते पृथक्। धीरा देवेषु सुम्नया ॥४॥

द्रष्टाहरू हलो नार्दछन्। समयअनुसार विभिन्न किसिमले जुवा तयार गर्दछन्। बुद्धिले सम्पन्न व्यक्ति देवताका लागि श्रेष्ठ मनले स्तुति गर्दछन्।

निराहावान्कृणोतन सं वरत्रा दधातन।
सिञ्चामहा अवतमुद्रिणं वयं सुषेकमनुपक्षितम् ॥५॥

हे मित्र हो ! गाई आदि पशुले जल पिउने उपयुक्त ठाउँ बनाओ। तिनलाई एकापसमा डोरीले बाँध। हामी सफा पानीले युक्त, उत्तम रीतिले खेत सिँचाइ गर्न सक्षम, अनन्त स्रोत भएका कुवाबाट जल ल्याएर सिँचाइ गर्दछौँ।

इष्कृताहावमवतं सुवरत्रं सुषेचनम्। उद्रिणं सिञ्चे अक्षितम् ॥६॥

पिउनलायक गतिलो पानीले योग्य स्थान सजिएको, उत्तम डोरी भएको, उचित विधिले सेचन कार्य गर्न जात्रे, अक्षय जलको भण्डारजस्ता कुवाबाट हामी सिँचाइ गर्दछौँ।

प्रीणीताश्वान्हितं जयाथ स्वस्तिवाहं रथमित्कृणुध्वम्।
द्रोणाहावमवतमश्मचक्रमंसत्रकोशं सिञ्चता नृपाणम् ॥७॥

हे किसान हो ! अश्वजस्तै बलिया जोत्ने गोरुलाई पुग्ने गरी घाँसपानी खुवाओ। खेतमा भएको हितकारी अन्न उपलब्ध गर। सुगमताले बाली ओसार्ने रथ बनाओ। यहाँ पानी भरेर ढुङ्गाको चक्रजस्तो डुँड पशुले पानी खान राख। मानिसका लागि सुहाउँदो पानीको भाँडो इनारका आकारमा बनाएर त्यसमा पानी भर।

व्रजं कृणुध्वं स हि वो नृपाणो वर्म सीव्यध्वं बहुला पृथूनि।
पुरः कृणुध्वमायसीरधृष्टा मा वः सुस्रोच्चमसो दृंहता तम् ॥८॥

हे मित्र हो ! गोठ राम्ररी बनाओ। त्यो ठाउँ निश्चय पनि मानिसले सजिलै पानी खान हुने खालको छ। अनेकौँ ठूला कवच बनाओ। शत्रुबाट सुरक्षित, फलामले बनेका शस्त्रास्त्राले सुसज्जित, बलिया सहर निर्माण गर। तिमीहरूको चमस पात्रमा प्वाल नपरोस्, त्यसमा राखिएको जल व्यर्थमा खेर नजाओस्।

आ वो धियं यज्ञियां वर्त ऊतये देवा देवीं यजतां यज्ञियामिह।
सा नो दुहीयद्यवसेव गत्वी सहस्रधारा पयसा मही गौः ॥९॥

हे देवता हो ! हामी यज्ञ धारण गर्ने बुद्धि तिमीहरूतिर प्रेरित गर्दछौँ। यजनीय, तेजस्वी र सम्माननीय बुद्धि यज्ञस्थलमा प्रतिष्ठित गराओ। घाँस खाएर गाईले हजारौँ धाराले युक्त दुध दिएझैँ त्यस बुद्धिले अभिलाषा पूर्तिमा सहायता गरोस्।

आ तू षिञ्च हरिमीं द्रोरुपस्थे वाशीभिस्तक्षताश्मन्मयीभिः।
परिष्वजध्वं दश कक्ष्याभिरुभे धुरौ प्रति वह्निं युनक्त ॥१०॥

हे अध्वर्यु हो ! काठका भाँडामा रहेको हरियो वर्णको सोमले सेचन गर। ढुङ्गाले बनेका बन्चराले पात्र बनाओ। दस औँलाले त्यो पात्र कसेर समात। रथ तान्नका लागि धुराका दुवैतिर पशु नार।

उभे धुरौ वह्निरापिब्दमानोऽन्तर्योनेव चरति द्विजानिः।
वनस्पतिं वन आस्थापयध्वं नि षू दधिध्वमखनन्त उत्सम् ॥११॥

ध्वनि गुन्जाउँदै गोरुले रथका दुवै धुरा तानेका छन्। त्यसले मानौँ सोमरस पात्रमा खन्याउँदै छन् कि जस्तो लाग्दछ। हे ऋत्विक् हो ! आधारस्थलमा गाडा राम्ररी अड्याओ। त्यसो भएपछि गाडा आश्रयहीन हुन पाउँदैन।

कपृन्नरः कपृथमुद्दधातन चोदयत खुदत वाजसातये।
निष्टिग्र्यः पुत्रमा च्यावयोतय इन्द्रं सबाध इह सोमपीतये ॥१२॥

हे कर्मशील मानिस हो ! इन्द्रदेव गतिलो सुखदाता हुन्। ती सुखदाता इन्द्रदेवलाई आफ्ना आँतमा धारण गर र अन्न, बल, ऐश्वर्य आदि लाभ गराउनका लागि प्रेरित गर। उनैलाई प्रार्थना गर र शान्ति प्राप्त गर। यस भूलोकमा संरक्षण पाउन, कष्ट निवारण गर्न र सोमपान गर्नका लागि अदितिका पुत्र इन्द्रदेवलाई आह्वान गर।

[सूक्त - १०२]

ऋषि - मुद्गल भार्म्यश्व। देवता - द्रुघण इन्द्र। छन्द - त्रिष्टुप् बृहती।

प्र ते रथं मिथूकृतमिन्द्रोऽवतु धृष्णुया।
अस्मिन्नाजौ पुरुहूत श्रवाय्ये धनभक्षेषु नोऽव ॥१॥

हे मुद्गल ऋषि ! तिम्रो रथ युद्धभूमिमा आश्रयविहीन अवस्थामा हुँदा पराक्रमी इन्द्रदेवले संरक्षण

गरुन्। अनेकौं तिरबाट बोलाइने हे इन्द्रदेव ! यस प्रख्यात सङ्ग्राम- भूमिमा ऐश्वर्य प्राप्त गर्ने बेलामा हामीलाई उचित संरक्षण प्रदान गर।

**उत्स्म वातो वहति वासो अस्या अधिरथं यदजयत्सहस्रम्।**
**रथीरभून्मुद्‌गलानी गविष्टौ भरे कृतं व्यचेदिन्द्रसेना ॥२॥**

सङ्ग्रामक्षेत्रमा रथमा चढेर मुद्‌गल ऋषिकी पत्नी इन्द्रसेनाले हजारौं गाईमाथि विजय प्राप्त गर्दा उनको वस्त्र वायुले मास्तिर उडायो। गाईमाथि विजय प्राप्त गर्ने बेलामा उनी सारथी भइन्। तिनैले सङ्ग्राममा शत्रुको अधिकारक्षेत्रबाट गाई छुटाएर ल्यएकी हुन्।

**अन्तर्यच्छ जिघांसतो वज्रमिन्द्राभिदासतः।**
**दासस्य वा मघवन्नार्यस्य वा सनुतर्यवया वधम् ॥३॥**

हे इन्द्रदेव ! तिमी अनिष्टकारी र विध्वंसक शत्रुमाथि वज्र प्रहार गर। हे ऐश्वर्यवान् इन्द्रदेव ! दास वा आर्यशत्रुले परोक्ष रूपमा गरेका शस्त्रको प्रहार असफल गराऊ।

**उद्नो ह्रदमपिबज्जर्हृषाणः कूटं स्म तृंहदभिमातिमेति।**
**प्र मुष्कभारः श्रव इच्छमानोऽजिरं बाहू अभरत्सिषासन् ॥४॥**

यो गोरु जलले भरिपूर्ण भएका जलाशयको जल आनन्दमग्न भएर पिउँछ। आफ्ना सिङले माटाको ढिस्को खनेर भत्काउँदै शत्रुमाथि हमला गर्दछ। ऐश्वर्यको कामनाले प्रेरित भएर वेगपूर्वक दुवै सिङ हल्लाउँदै आक्रमण गर्नका लागि अगाडि सर्दछ।

**न्यक्रन्दयन्नुपयन्त एनममेहयन्वृषभं मध्य आजेः।**
**तेन सूभर्वं शतवत्सहस्रं गवां मुद्‌गलः प्रधने जिगाय ॥५॥**

मानिसले नजिकै गएर त्यस साँढेलाई डुक्रिएर हल्ला गर्न प्रेरित गर्दै युद्धभूमिमा लगेर उभ्याए। यसो भएपछि मुद्‌गल ऋषिले लडाइँमा गतिलो र धेरै आहार आदिमा निपुण सयौं मात्रै होइन, हजारौं गाई विजय गरे।

**ककर्दवे वृषभो युक्त आसीदवावचीत्सारथिरस्य केशी।**
**दुधेर्युक्तस्य द्रवतः सहानस ऋच्छन्ति ष्मा निष्पदो मुद्‌गलानीम् ॥६॥**

शत्रु हिंसाका लागि युद्धभूमिमा गाडामा गोरु नारियो। त्यसको रासडोरी नियन्त्रण गर्न सक्ने मुद्‌गल ऋषिकी पत्नी कराउँदै त्यसलाई प्रोत्साहित गर्दै थिइन्। रथमा बाँधिएको गोरु एकै छिन ठभिएन, रथ लिएर कुद्यो। सुसज्जित सेना मुद्‌गल्नीका पछि कुद्यो।

**उत प्रधिमुदहन्नस्य विद्वानुपायुनग्वंसगमत्र शिक्षन्।**
**इन्द्र उदावत्पतिमघ्न्यानामरंहत पद्याभिः ककुद्मान् ॥७॥**

ज्ञानवान् मुद्‌गल ऋषिले रथको चक्र आफ्ना नियन्त्रणमा राखे। अति कुशलताका साथ गोरु रथमा बाँधेर तयार गरे। इन्द्रले गाईको स्वामी त्यस गोरुको सुरक्षा गरे। त्यसपछि त्यो गतिलो गोरु अति वेगका साथ मार्गमा अघि बढ्न लाग्यो।

**शुनमष्ट्राव्यचरत्कपर्दी वरत्रायां दार्वानह्यमानः।**
**नृम्णानि कृण्वन्बहवे जनाय गाः पस्पशानस्तविषीरधत्त ॥८॥**

चाबुक र आभूषणले युक्त वृषभ छालाको डोरीले रथमा बाँधिएर सुबिस्तासाथ डुल्न लाग्यो। उसले असङ्ख्य मानिसलाई खोजेअनुसारको ऐश्वर्य प्रदान गऱ्यो र गाई जितेर महान् शक्ति धारण गऱ्यो।

**इमं तं पश्य वृषभस्य युञ्जं काष्ठाया मध्ये द्रुघणं शयानम्।**
**येन जिगाय शतवत्सहस्रं गवां मुद्‌गलः पृतनाज्येषु ॥९॥**

गोरुलाई मद्दत पुऱ्याउने काठका हतियार सङ्ग्रामका मैदानमा खसेका हेर। यिनै हतियारले मुद्‌गल ऋषिले सयौं मात्र होइन, हजारौं गाई जितेका थिए।

**आरेअघा को न्वित्था ददर्श यं युञ्जन्ति तम्वा स्थापयन्ति।**
**नास्मै तृणं नोदकमा भरन्त्युत्तरो धुरो वहति प्रदेदिशत् ॥१०॥**

रथ तान्न नारिकालाई नै त्यही रथ चलाउन पनि बसाएको कसैले नजिकै वा टाढै पनि देखेको छ त ? त्यसका लागि घाँसपानी ल्याइँदैन तापनि रथका धुराको भारी बोकेकै हुन्छ र स्वामीलाई विजयी बनाउँछ।

परिवृक्तेव पतिविद्यमानट् पीप्याना कूचक्रेणेव सिञ्चन्।
ऐषैष्या चिद्रथ्या जयेम सुमुङ्गलं सिनवदस्तु सातम् ॥११॥

त्यागिएकी स्त्रीजस्ती मुद्गल्नीले मेघझैं बाणको वर्षा गर्दै शक्ति प्रदर्शन गरेर आफ्ना पतिको धन ग्रहण गरिन्। यस्तै सारथीले हामी विजयी भई प्रचुर अन्न र धन पाऔं।

त्वं विश्वस्य जगतश्चक्षुरिन्द्रासि चक्षुषः।
वृषा यदाजिं वृषणा सिषाससि चोदयन्वध्रिणा युजा ॥१२॥

हे इन्द्रदेव ! तिमी सम्पूर्ण विश्वका लागि आँखाजस्तै छौ। तिमी शक्तिमान् र मन लागेको कुरो पूरा गराउने पनि हौ। तिमी सङ्ग्रामक्षेत्रमा दुवै अश्व एकै चोटि डोरीले बाँधेर धपाउँदै विजयश्री उपलब्ध गर्दछौ।

[सूक्त – १०३]

**ऋषि** – अप्रतिरथ ऐन्द्र। **देवता** – इन्द्र देवी मरुद्गण। **छन्द** – त्रिष्टुप् अनुष्टुप्।

आशुः शिशानो वृषभो न भीमो घनाघनः क्षोभणश्चर्षणीनाम्।
सङ्क्रन्दनोऽनिमिष एकवीरः शतं सेना अजयत्साकमिन्द्र ॥१॥

स्फुर्तिवान्, विकराल, साँढेझैं शत्रु तर्साउने, दुष्टनाशक, शत्रु रुवाउने, द्वेष गर्नेलाई दिक्क पार्ने अल्छ्याईं नभएका वीर इन्द्रदेव सयौं शत्रु जितेर विजयी हुन्छन्।

सङ्क्रन्दनेनानिमिषेण जिष्णुना युत्कारेण दुश्च्यवनेन धृष्णुना।
तदिन्द्रेण जयत तत्सहध्वं युधो नर इषुहस्तेन वृष्णा ॥२॥

हे योद्धा हो ! शत्रु रुवाउने, अल्छ्याईं नभएका, विजयी, निपुण, अविचल, बाणधारी इन्द्रदेवका सहायताले युद्ध जितेर शत्रु भगाओ।

स इषुहस्तैः स निषङ्गिभिर्वशी संस्रष्टा स युध इन्द्रो गणेन।
संसृष्टजित्सोमपा बाहुशर्ध्युग्रधन्वा प्रतिहिताभिरस्ता ॥३॥

इन्द्रदेव बाण र तरवारधारी योद्धाका सहयोगले शत्रु नियन्त्रण गर्दछन्। उनी युद्धमा अति कुशल, विजेता, सोमपान गर्ने, बाहुबलसम्पन्न, धनुर्धारी र शत्रुसंहारक छन्।

बृहस्पते परि दीया रथेन रक्षोहामित्राँ अपबाधमानः।
प्रभञ्जन्त्सेनाः प्रमृणो युधा जयन्नस्माकमेध्यविता रथानाम् ॥४॥

हे सर्वपालक इन्द्रदेव ! राक्षस मार्दै, शत्रु तर्साएर उसको सेना ध्वंस गराउँदै तिमीहरू रथमा यहाँ आओ। युद्धमा विजयी भएर हाम्रा रथको रक्षा गर्दै अघि बढ।

बलविज्ञाय स्थविरः प्रवीरः सहस्वान्वाजी सहमान उग्रः।
अभिवीरो अभिसत्वा सहोजा जैत्रमिन्द्र रथमा तिष्ठ गोवित् ॥५॥

हे इन्द्रदेव ! सबैका बलको ज्ञान भएका, उत्तम वीर, शत्रुको आक्रमण खप्ने, बलवान्, शत्रुमाथि विजय गर्ने, उग्र, महावीर, शक्तिशाली भएर जन्मेका, गाईको रक्षा गर्ने तिमी विजयी रथमा प्रतिष्ठित छौ।

गोत्रभिदं गोविदं वज्रबाहुं जयन्तमज्म प्रमृणन्तमोजसा।
इमं सजाता अनु वीरयध्वमिन्द्रं सखायो अनु सं रभध्वम् ॥६॥

हे योद्धा हो ! तिमीहरू सबै शत्रुका किल्लाका भेदक, गाईको रक्षा गर्ने, वज्रजस्तै बलिया भुजा भएका, शत्रु विनाश गर्ने, विजेता इन्द्रका नेतृत्वमा रहेर पराक्रम देखाओ। हे मित्र हो ! इन्द्रदेव रिसाउँदा शत्रुमाथि रिस गर।

अभि गोत्राणि सहसा गाहमानोऽदयो वीरः शतमन्युरिन्द्रः।
दुश्च्यवनः पृतनाषाडयुध्योऽस्माकं सेना अवतु प्र युत्सु ॥७॥

बलले शत्रुको किल्ला भत्काउने, पराक्रमी, शत्रुमाथि दया नगर्ने, वीर, अनीतिप्रति रिसाउने, अविचल, शत्रुविजेता, अद्वितीय योद्धा इन्द्रदेवले हाम्रो सेना संरक्षित गरुन्।

इन्द्र आसां नेता बृहस्पतिर्दक्षिणा यज्ञः पुर एतु सोमः।
देवसेनानामभिभञ्जतीनां जयन्तीनां मरुतो यन्त्वग्रम् ॥८॥

हाम्रा सेनालाई नेतृत्व प्रदान गर्ने हे इन्द्रदेव ! बृहस्पतिदेव सबैभन्दा अघि जाऊन्। दक्षिणायज्ञका सञ्चालक सोम अघि जाऊन्। शत्रुनाशक मरुत्हरू विजयी देवताका सेनाका अघि लागून्।

इन्द्रस्य वृष्णो वरुणस्य राज्ञ आदित्यानां मरुतां शर्ध उग्रम्।
मनमनसां भुवनच्यवानां घोषो देवानां जयतामुदस्थात् ॥९॥

बलशाली इन्द्रदेव, राजा वरुण, आदित्य र मरुत्‌हरूको तीक्ष्ण बल सहायक होस्। शत्रुको सहर ध्वस्त पार्ने, विशाल मन भएका र विजयी देवताको जयघोष गुन्जियोस्।

उद्धर्षय मघवन्नायुधान्युत्सत्वनां मामकानां मनांसि।
उद्‌वृत्रहन्वाजिनां वाजिनान्युद्रथानां जयतां यन्तु घोषाः ॥१०॥

हे सामर्थ्यवान् इन्द्रदेव ! हाम्रा शस्त्रधारी सेनालाई हर्ष र अश्वलाई वेग प्रदान गर। सैनिकका मनमा उत्साह भर। हे वृत्रहन्ता इन्द्रदेव ! विजयी भएर आउने हाम्रा रथको शब्द गुञ्जायमान होस्।

अस्माकमिन्द्रः समृतेषु ध्वजेष्वस्माकं या इषवस्ता जयन्तु।
अस्माकं वीरा उत्तरे भवन्त्वस्माँ उ देवा अवता हवेषु ॥११॥

युद्धमा हाम्रा सेनालाई इन्द्रदेवले सुरक्षा प्रदान गरुन्। हाम्रा बाण शत्रुमाथि विजयी होऊन्। हाम्रा वीरहरू विजयी होऊन्। हे देवता हो ! हामीलाई युद्धमा सुरक्षा गर।

अमीषां चित्तं प्रतिलोभयन्ती गृहाणाङ्गान्यप्वे परेहि।
अभि प्रेहि निर्दह हृत्सु शोकैरन्धेनामित्रास्तमसा सचन्ताम् ॥१२॥

हे पापवृत्ति हो ! हामीदेखि टाढै बस। शत्रुको चित्त भुल्याओ। उनका अङ्गमा ओगट। शत्रुमाथि आक्रमण गरेर उनका हृदयमा शोकका ज्वाला दन्काइदेओ। हाम्रा शत्रुलाई गहिरो अन्धकारमा पारेर अचेत गराओ।

प्रेता जयता नर इन्द्रो वः शर्म यच्छतु।
उग्रा वः सन्तु बाहवोऽनाधृष्या यथासथ ॥१३॥

हे वीर हो ! शत्रुमाथि आक्रमण गरेर विजयी होओ। इन्द्रदेवले तिमीहरूलाई सुख र शान्ति प्रदान गर्नेछन्। तिमीहरूका भुजामा उग्र सामर्थ्य भरियोस्। त्यसो भएपछि शत्रुले तिमीलाई आफ्ना अधिकारमा लिन नसकून्।

## [सूक्त - १०४]

ऋषि - अष्टक वैश्वामित्र। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

असावि सोमः पुरुहूत तुभ्यं हरिभ्यां यज्ञमुप याहि तूयम्।
तुभ्यं गिरो विप्रवीरा इयाना दधन्विर इन्द्र पिबा सुतस्य ॥१॥

हे असङ्ख्य तिरबाट बोलाइने इन्द्रदेव ! तिम्रा लागि सोमरस पेलिएको छ। तिमी दुवै अश्वसँगै यज्ञमा शीघ्र उपस्थित होऊ। प्रमुख स्तोताले तिम्रा लागि उत्तम स्तोत्र गाउँदै यो सोम तयार गरेका हुन्। हे इन्द्रदेव ! तिमी आएर यो सोमरस ग्रहण गर।

अप्सु धूतस्य हरिवः पिबेह नृभिः सुतस्य जठरं पृणस्व।
मिमिक्षुर्यमद्रय इन्द्र तुभ्यं तेभिर्वर्धस्व मदमुक्थवाहः ॥२॥

अश्वका अधिपति हे इन्द्रदेव ! तिमी कर्मशली अध्वर्युले पेलेको, जलले सफा गरेको, यस यज्ञमा ल्याएको सोमरस पान गर। यसले तिम्रो पेट भरोस्। हे प्रशंसनीय इन्द्रदेव ! ढुङ्गाले पेलेको सोम पिएर उत्साहित हुँदै हाम्रो स्तुति ग्रहण गर।

प्रोग्रां पीतिं वृष्ण इयर्मि सत्यां प्रयै सुतस्य हर्यश्व तुभ्यम्।
इन्द्र धेनाभिरिह मादयस्व धीभिर्विश्वाभिः शच्या गृणानः ॥३॥

हरियो वर्णका अश्वका अधिपति हे इन्द्रदेव ! तिम्रै लागि सोमरस पेलिएको छ। सुख र ऐश्वर्यको वर्षा गराउने तिमी यज्ञतर्फ सुनिश्चित रूपले आउँछौ भन्ने जानेर नै तिमीले पान गर्नका लागि हामी यो सोम प्रस्तुत गर्दै छौं। हे देव ! तिमी श्रेष्ठतम स्तोत्र ग्रहण गरेर आनन्दित होऊ। विभिन्न खालका सत्कर्म तिमी नै सम्पादन गर र विभिन्न खालका स्तोत्रले सन्तुष्ट होऊ।

ऊती शचीवस्तव वीर्येण वयो दधाना उशिज ऋतज्ञाः।
प्रजावदिन्द्र मनुषो दुरोणे तस्थुर्गृणन्तः सधमाद्यासः ॥४॥

हे सामर्थ्यवान् इन्द्रदेव ! उशिज्‌का वंशज यज्ञका विशेषज्ञ हुन्। उनीहरू तिम्रो आश्रित भएर तिम्रै प्रभावले अन्न र सन्तति प्राप्त गर्दै यजमानका यज्ञगृहमा रहन थालेका छन्। उनीहरू सबै आनन्दविभोर भएर तिम्रो प्रार्थना गर्न लागे।

प्रणीतिभिष्टे हर्यश्व सुष्टोः सुषुम्नस्य पुरुरुचो जनासः।
मंहिष्ठामूतिं वितिरे दधानाः स्तोतार इन्द्र तव सूनृताभिः ॥५॥

अश्वका अधिपति हे इन्द्रदेव । तिम्रो स्तोत्र सुहाउँदिलो छ। तिम्रो ऐश्वर्य अद्भुत छ र तिम्रो कान्ति अति उज्ज्वल छ। तिमीबाट अपार वैभव पाएर प्रसन्न हुँदै स्तोताले तिम्रो प्रार्थना गरे। उनीहरूले आफ्नो सँगै अरूको संरक्षण गर्न सहयोग प्रदान गरे।

उप ब्रह्माणि हरिवो हरिभ्यां सोमस्य याहि पीतये सुतस्य।
इन्द्र त्वा यज्ञः क्षममाणमानड् दाश्वाँ अस्यध्वरस्य प्रकेतः ॥६॥

हे अश्वले सम्पन्न इन्द्रदेव ! तिमी पेलिएको सोमरस पान गर्नका लागि आफ्ना दुवै अश्वमा यज्ञमा आउँछौ। हें इन्द्रदेव ! तिमी क्षमाशील र शक्तिशाली छौ। तिमीलाई नै यज्ञ प्राप्त हुन्छ। यज्ञका विषयमा उत्तम ज्ञान भएकाले अविरल कर्मफल प्रदान गर्छौ।

सहस्रवाजमभिमातिषाहं सुतेरणं मघवानं सुवृक्तिम्।
उप भूषन्ति गिरो अप्रतीतमिन्द्रं नमस्या जरितुः पनन्त ॥७॥

असीम शक्तिका अधिपति, शत्रु पराजित गराउने, सोमपानमा रुचि लिने, श्रेष्ठ स्तुतिले युक्त र सङ्ग्रामबाट विमुख नहुने इन्द्रदेवलाई स्तोत्ररूपी वाणीले सुशोभित गर्दछन्। स्तोताका अर्चनाले उनलाई नै महिमाशाली बनाउँछ।

सप्तापो देवीः सुरणा अमृक्ता याभिः सिन्धुमतर इन्द्र पूर्भित्।
नवतिं स्रोत्या नव च स्रवन्तीर्देवेभ्यो गातुं मनुषे च विन्द ॥८॥

हे इन्द्रदेव ! तीव्र गतिशील गङ्गा आदि सात नदीले तिम्रा शत्रुको सहर विनाश गर्दै सागरलाई बलियो पारेका छन्। तिमीले देवता र मानिसको हितका लागि उनान्सय नदीलाई बग्नका लागि बाटो खोलिदियौ।

अपो महीरभिशस्तेरमुञ्चोऽजागरास्वधि देव एकः।
इन्द्र यास्त्वं वृत्रतूर्ये चकर्थ ताभिर्विश्वायुस्तन्वं पुपुष्याः ॥९॥

हे इन्द्रदेव ! तिमीले जीवनदायी जललाई असुरका आक्रमणबाट जोगायौ। जल ल्याउन तिमी स्वयं खटिएका थियौ। तिमी वृत्रासुर संहार गर्ने काम गर्दा सबैका लागि जीवनदाता बन्छौ र सम्पूर्ण विश्वको शरीर नै परिपुष्ट गराउँछौ।

वीरेण्यः क्रतुरिन्द्रः सुशस्तिरुतापि धेना पुरुहूतमीट्टे।
आर्दयद्वृत्रमकृणोदु लोकं ससाहे शक्रः पृतना अभिष्टिः ॥१०॥

हे इन्द्रदेव ! तिमी महान् योद्धा, क्रियाकुशल र श्रेष्ठ स्तवनीय छौ। वाणी नामकी देवीले प्रकट भएर तिमीलाई नै प्रार्थना गर्दछिन्। तिमी वृत्रका नाशक र प्रकाशका उत्पादक हौ। सामर्थ्यशाली तिमीले आक्रमण गर्दा शत्रुको सेना पराजित गरायौ।

शुनं हुवेम मघवानमिन्द्रमस्मिन्भरे नृतमं वाजसातौ।
शृण्वन्तमुग्रमूतये समत्सु घ्नन्तं वृत्राणि सञ्जितं धनानाम् ॥११॥

विशाल काया भएका र ऐश्वर्यशाली इन्द्रदेवलाई हामी आह्वान गर्दछौं। युद्धमा अन्न आदिको वितरण हुँदा उनैले मुख्य रूपमा नेतृत्व गर्दछन्। आफ्ना पक्षको संरक्षणका लागि उनले समरक्षेत्रमा उग्ररूप धारण गर्दछन्, शत्रु संहार गर्दछन्, वृत्रलाई विनाश गर्दछन् र ऐश्वर्य सम्पदामाथि विजय प्राप्त गर्दछन्।

[सूक्त – १०५

ऋषि – दुर्मित्र सुमित्र कौत्स। देवता – इन्द्र। छन्द – उष्णिक् गायत्री त्रिष्टुप्।

कदा वसो स्तोत्रं हर्यत आव श्मशा रुधद्वाः। दीर्घं सुतं वाताप्याय ॥१॥

स्तुतिले प्रसन्न हुने हे इन्द्रदेव ! नहरमा बगाउन पानी रोकिएझैं तयार गरिएको सोमरस तिमीलाई प्रदान गर्न कहिले रोकौं ?

हरी यस्य सुयुजा विव्रता वेरर्वन्तानु शेपा। उभा रजी न केशिना पतिर्दन् ॥२॥

इन्द्रदेवका दुवै अश्व राम्ररी दाइएका छन्, अनेकौं कार्य निर्वाह गर्दछन्, कुशल छन्, अति बलिष्ठ र चन्द्रसूर्य तथा द्यावापृथिवीजत्तिकै महिमामय तेजले सम्पन्न छन्। सबैलाई सुशोभित गराउने सबैका स्वामी इन्द्रदेव चाहिएको कुरो दिनमा सक्षम छन्।

अप योरिन्द्रः पापज आ मर्तो न शश्रमाणो बिभीवान्।
शुभे यद्युयुजे तविषीवान् ॥३॥

भयकारक, इन्द्रदेव मानिसजत्तिकै परिश्रमी छन्। उनी सक्षम साधनले सम्पन्न भएर शुभ कार्य बढाएर पाप पराजित गर्दछन्।

सचायोरिन्द्रश्चर्कृष आँ उपानसः सपर्यन्। नदयोर्विव्रतयोः शूर इन्द्रः ॥४॥

मानिसले पूजा गर्ने इन्द्रदेवले सम्पूर्ण ऐश्वर्य सङ्ग्रह गरे। उनी विभिन्न कार्य सम्पन्न गर्छन् र ध्वनि गर्ने दुई अश्व गतिमान् बनाउँछन्।

अधि यस्तस्थौ केशवन्ता व्यचस्वन्ता न पुष्ट्यै।
वनोति शिप्राभ्यां शिप्रिणीवान् ॥५॥

लामा जगर हुने, विशाल कायायुक्त दुवै अश्वमा आरुढ इन्द्रदेव आफ्नो शारीरिक पुष्टिका निम्ति प्रतिष्ठित हुन्छन्। उनी बलिया दाह्रायुक्त भएर शत्रु विनाश गर्दछन्।

प्रास्तौदृष्वौजा ऋष्वेभिस्ततक्ष शूरः शवसा। ऋभुर्न क्रतुभिर्मातरिश्वा ॥६॥

शक्तिले सम्पन्न, अत्यन्त सुन्दर मरुत्‌हरूसँगै इन्द्रदेव यजमानद्वारा श्रेष्ठ रीतिले स्तुति गर्न योग्य छन्। उनी अन्तरिक्षमा निवास गर्दछन्। ऋभुदेवका कौशलले रथ रचना गरेझैं शूरवीर इन्द्रदेवका सामर्थ्यले विभिन्न वीरोचित कार्य पूरा गरेको छ।

वज्रं यश्चक्रे सुहनाय दस्यवेहिरीमशो हिरीमान्। अरुतहनुरद्भुतं न रजः ॥७॥

इन्द्रदेव हरियो वर्णका लामो जगर भएका अश्वयुक्त र सुन्दर च्यापु भएका छन्, उनैले दुष्ट दस्यु संहार गर्न वज्र सिर्जना गरे। त्यो वज्र विलक्षण तेज र शक्तिसम्पन्न छ।

अव नो वृजिना शिशीह्यृचा वनेमानृचः। नाब्रह्मा यज्ञ ऋधग्जोषति त्वे ॥८॥

हे इन्द्रदेव ! हाम्रा सबै दुष्कर्मरूपी पाप नष्ट गर र हामी स्तुतिका प्रभावले उपासनारहित नास्तिकलाई पराजित गर्न सकौं। स्तोत्ररहित यज्ञकर्मले तिमीलाई कहिल्यै आनन्दित गर्न सक्दैन।

ऊर्ध्वा यत्ते त्रेतिनी भूद्यज्ञस्य धूर्षु सद्मन्। सजूर्नावं स्वयशसं सचायोः ॥९॥

हे इन्द्रदेव ! तिम्रा त्रेताग्निको ज्वाला यज्ञस्थलमा ऋत्विक्‌हरूले प्रदीप्त गराउँदा तिमी यजमानसँगै प्रसन्न भएर सबैलाई प्रेरित गर्दै यशस्वी नौकामा आरुढ होऊ।

श्रिये ते पृश्निरुपसेचनी भूच्छ्रिये दर्विररेपाः।
यया स्वे पात्रे सिञ्चस उत् ॥१०॥

हे इन्द्रदेव ! दुधालु गाई तिम्रै कल्याणका लागि होऊन्। तिमीले मधु लिएर जाने दर्वी नामको पात्र तिम्रा लागि शुद्ध र कल्याणकारी होस्।

शतं वा यदसुर्य प्रति त्वा सुमित्र इत्थास्तौद्दुर्मित्र इत्थास्तौत्।
आवो यद्दस्युहत्ये कुत्सपुत्रं प्रावो यद्दस्युहत्ये कुत्सवत्सम् ॥११॥

हे सामर्थ्यवान् इन्द्रदेव ! तिम्रा लागि यस किसिमले सुमित्रले सयौं खालका स्तोत्र पाठ गरे। दुर्मित्रले पनि तिमीलाई स्तुति गरे। दस्यु वधका समयमा तिमीले कुत्सका पुत्र दुर्मित्र र सुमित्रलाई संरक्षण प्रदान गरेका थियौ।

[सूक्त - १०६]

ऋषि - भूतांश काश्यप। देवता - अश्विनीकुमार। छन्द - त्रिष्टुप्।

उभा उ नूनं तदिदर्थयेथे वि तन्वाथे धियो वस्त्रापसेव।
सध्रीचीना यातवे प्रेमजीगः सुदिनेव पृक्ष आ तंसयेथे ॥१॥

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै निश्चय पनि हाम्रो आहुति र स्तोत्रको आकाङ्क्षा गर्दछौ। जुलाहाले लुगाको तान फैलाएझैं तिमीहरू दुवै हाम्रो स्तुति विस्तार गर्दछौ। यजमानले तिमीहरूलाई राम्रो स्तुति गर्दछन्। त्यसो भएकाले तिमीहरू दुवै सँगसँगै आओ। सूर्य र चन्द्रमाझैं तिमीहरू दुवै खाद्य पदार्थ कल्याणकारी बनाउँछौ।

उष्टारेव फर्वरेषु श्रयेथे प्रायोगेव श्वात्र्या शासुरेथः।
दूतेव हि ष्ठो यशसा जनेषु माप स्थातं महिषेवावपानात् ॥२॥

हे अश्विनीकुमार हो ! हलगोरुले देखिने गरी जमिनमा हलाको भारी बोकेर हिँडेझैं तिमीहरू दुवै यज्ञकर्ता यजमानका नजिकै पुग्दछौ। रथमा नारिएका जोडा अश्वझैं धन दान गर्नका लागि

स्तोताका नजिकै जान्छौ। दूतजस्तै तिमीहरू कीर्तिमान होओ। जलाशयभन्दा पर भैंसी नगएझैं तिमीहरू दुई हामीभन्दा पर नजाओ।

**सांकयुजा शकुनस्येव पक्ष पश्वेव चित्रा यजुरा गमिष्टम्।**
**अग्निरिव देवयोर्दीदिवांसा परिज्मानेव यजथः पुरुत्रा ॥३॥**

चराका दुवै पंखेटा एकापसमा जोडिएझैं तिमीहरू दुई परस्पर आबद्ध छौ। दुई वटा विलक्षण पशुझैं तिमीहरू दुई हाम्रा यज्ञमा उपस्थित भएका छौ। देवत्वको आकाङ्क्षा गर्ने याजकका यज्ञाग्निजस्तै तिमीहरू दुवै दीप्तियुक्त छौ। सर्वत्र विचरण गर्ने दुवै पुरोहितजस्तै अनेकौं स्थानमा सम्मानित हुन्छौ।

**आपी वो अस्मे पितरेव पुत्रोग्रेव रुचा नृपतीव तुर्यै।**
**इर्येव पुष्ट्यै किरणेव भुज्यै श्रुष्टीवानेव हवमा गमिष्टम् ॥४॥**

हे अश्विनीकुमार हो ! मातापिताले पुत्रलाई माया गरेजस्तै हामीप्रति तिमीहरूको प्रीति रहेको छ। तिमीहरू दुवै अग्नि र सूर्यको जस्तै दीप्तिले सम्पन्न छौ। राजाजस्तै गतिमा शीघ्रतापूर्वक कार्य गर्दछौ। साधनसम्पन्न व्यक्तिले जस्तै पालनपोषण गर्दछौ। अन्न आदि उपभोग्य सामग्री सम्पादन गर्न प्रकाशजस्तै छौ। तिमीहरू दुवै शीघ्र गतिशील अश्वको जस्तै सुखपूर्वक यस यज्ञमा आओ।

**वंसगेव पूषर्या शिम्बाता मित्रेव ऋता शतरा शातपन्ता।**
**वाजेवोच्चा वयसा घर्म्येष्ठा मेषेवेषा सपर्या३ पुरीषा ॥५॥**

हे अश्विनीकुमार हो ! तिमीहरू दुवै साँढेजस्तै स्वस्थ, सुन्दर र सुखदायक छौ। मित्र र वरुणजस्तै परस्पर यथार्थदर्शी, सयौं किसिमका धनले युक्त र श्रेष्ठ कार्य गर्दछौ। बलशाली दुई अश्वजस्ता तिमीहरू अग्ला र बलसम्पन्न छौ। तिमीहरू चन्द्रसूर्यजस्तै तेजस्वी, भेडाजस्तै अन्न आदि सेवन गरेर सुगठित अङ्गप्रत्यङ्गले सम्पन्न छौ।

**सृण्येव जर्भरी तुर्फरीतू नैतोशेव तुर्फरी पर्फरीका।**
**उदन्यजेव जेमना मदेरू ता मे जराय्वजरं मरायु ॥६॥**

हे अश्विनीकुमार हो ! तिमीहरू मदमत्त हात्ती नियन्त्रण गर्ने अङ्कुशझैं शत्रुहन्ता हौ। दुष्ट संहार गर्ने, राजपुरुषजस्तै हिंसक र विदारक छौ। तिमीहरू प्रजाको भरणपोषण गर्ने, जलमा उत्पन्न भएको रत्नजस्तै स्वच्छ, विजयशील, अति बलशाली र प्रशंसनीय छौ। हाम्रो बुढिएको, जीर्ण भएको र मरणशील शरीर तिमीहरू अजर र स्वस्थ गराओ।

**पज्रेव चर्चरं जारं मरायु क्षद्मेवार्थेषु तर्तरीथ उग्रा।**
**ऋभू नापत्खरमज्रा खरज्रुर्वायुर्न पर्फरत्क्षयद्रयीणाम् ॥७॥**

हे पराक्रमी अश्विनीकुमार हो ! गोडा हुने मानिस अर्कालाई पानीमा पारि तर्न सहायक भएझैं तिमीहरू दुवै हाम्रा मरणशील शरीरलाई सङ्कटबाट मुक्त गरेर अभीष्ट उद्देश्यतर्फ उन्मुख गराउन सक्छौ। बलसम्पन्न ऋभुहरूको जस्तै तिमीहरूले पनि वेगवान् रथ प्राप्त गरेका छौ। वायुजस्तै तीव्र गतिशील भएर सर्वत्र सञ्चरित हुँदै तिमीहरू शत्रुको सम्पदा लिएर हाम्रा नजिकै आओ।

**घर्मेव मधु जठरे सनेरू भगेविता तुर्फरी फारिवारम्।**
**पतरेव चचरा चन्द्रनिर्णिङ्मनऋङ्गा मनन्या३ न जग्मी ॥८॥**

हे अश्विनीकुमार हो ! महाबलीजस्ता तिमीहरू आफ्ना पेटमा मधुर घिउ धारण गर। तिमीहरू धनका संरक्षक, शत्रुविनाशक र अति श्रेष्ठ आयुध धारण गर्ने हौ। तिमीहरू चरो उडेझैं सजिलैसित सर्वत्र गमन गर्दछौ र चन्द्रमाजत्तिकै आनन्ददायक छौ। स्तुति रुचाउने तिमीहरू दुवै मनका इच्छाले नै सिंगारिएर यज्ञमा उपस्थित हुन्छौ।

**बृहन्तेव गम्भरेषु प्रतिष्ठां पादेव गाधं तरते विदाथः।**
**कर्णेव शासुरनु हि स्माराथोंऽशेव नो भजतं चित्रमप्नः ॥९॥**

हे अश्विनीकुमार हो। श्रेष्ठ पुरुषजस्तै तिमीहरू दुवै गम्भीर स्थानमा पनि गौरव प्राप्त गर्दछौ। पौरने गोडाजस्तै तिमीहरू जलको गहिराइ अनुभव गर्दछौ। कानजस्तै भएर स्तोताको मधुर स्तुति सुन्दछौ। यज्ञको अङ्गजस्तै भएर हाम्रो अच[illegible]को कर्म सेवन गर।

आरङ्गरेव मध्वेरयेथे सारघेव गवि नीचीनबारे।
कीनारेव स्वेदमासिष्विदाना क्षामेवोर्जा सूयवसात्सचेथे ॥१०॥
मौरीले मह जम्मा गरेझैं तिमीहरू गाईका थुनमा महजस्तै दुध सञ्चय गराउँछौ। परिश्रमी किसानले मिहिनेत गरेर पसिना बगाएझैं शीतका थोपाका रूपमा जल सेचन गर्दछौ। दुब्लाएका गाईले चरनमा जाँदा आहारा प्राप्त गरेझैं तिमीहरू दुवै यज्ञमा आएर हविष्यान्नरूपी आहार ग्रहण गर।

ऋध्याम स्तोमं सनुयाम वाजमा नो मन्त्रं सरथेहोप यातम्।
यशो न पक्वं मधु गोष्वन्तरा भूतांशो अश्विनोः काममप्राः ॥११॥
हे अश्विनीकुमार हो ! तिमीहरू प्रार्थनायुक्त स्तोत्र बढाओ र हविष्ययुक्त अन्न हामीलाई प्रदान गर। तिमीहरू एउटै रथमा बसेर हाम्रो स्तोत्र सुन्न आओ। भूतांश ऋषिले यो स्तोत्र पाठ गरेर अश्विनीकुमारको अभिलाषा पूरा गरेका छन्।

[सूक्त - १०७]

**ऋषि** - आङ्गिरस दक्षिणा प्राजापत्या। **देवता** - दक्षिणा यजमान। **छन्द** - त्रिष्टुप्।

आविरभून्महि माघोनमेषां विश्वं जीवं तमसो निरमोचि।
महि ज्योतिः पितृभिर्दत्तमागादुरुः पन्था दक्षिणाया अदर्शि ॥१॥
साधक यजमानको सिद्धिका लागि इन्द्रदेवको विस्तृत तेज सूर्यका रूपमा प्रकट भयो र सम्पूर्ण चराचर जगत् अन्धकारबाट मुक्त भयो। पितृहरूले प्रदान गरेको सूर्यरूपी महान् ज्योति विराजमान भयो। दक्षिणा प्रदान गर्ने वा यज्ञको समाप्ति गर्ने समय भयो।

उच्चा दिवि दक्षिणावन्तो अस्थुर्ये अश्वदाः सह ते सूर्येण।
हिरण्यदा अमृतत्वं भजन्ते वासोदाः सोम प्र तिरन्त आयुः ॥२॥
दानी मानिस स्वर्गका उच्च पदमा विराजमान हुन्छन्। अश्व दान गर्नेहरू सूर्यसित रमाउँछन्। सुन दान गर्नेले अमर पद पाउँछन्। हे सोम ! वस्त्र आदि आङ ढाक्ने वा रक्षा गर्ने साधन तिमीलाई दान गर्ने सबैले तिमीबाट दीर्घायु प्राप्त गर्दछन्।

दैवी पूर्तिर्दक्षिणा देवयज्या न कवारिभ्यो नहि ते पृणन्ति।
अथा नरः प्रयतदक्षिणासोऽवद्यभिया बहवः पृणन्ति ॥३॥
देवतालाई श्रद्धाका भावनाले द्रव्य आदि दान गर्नाले पुण्यकर्मको वृद्धि हुन्छ। त्यो देवपूजाको विशिष्ट अङ्ग हो। यज्ञीय भावनाले रहित व्यक्तिलाई यस्तो पुण्य प्राप्त हुँदैन, किनभने दुराचारीले प्रार्थना र हविष्यान्नले देवता सन्तुष्ट गराउँदैन। पवित्र भावनाले दक्षिणा दिने र पापकर्मबाट डराउने यजमानले देवता खुसी बनाउँछन्।

शतधारं वायुमर्कं स्वर्विदं नृचक्षसस्ते अभि चक्षते हविः।
ये पृणन्ति प्र च यच्छन्ति सङ्गमे ते दक्षिणां दुहते सप्तमातरम् ॥४॥
सयौं मार्गबाट प्रवाहित वायु, स्वर्गका प्राप्त गराउने आदित्य, अन्य सबै कल्याणकारी देवता र मानिसका लागि पनि हविष्यान्न अर्पित गर्न यजमान तयार हुन्छन्। देवतालाई सन्तुष्ट गर्ने र यज्ञ आदिमा अन्न, द्रव्य आदि दान गर्ने मानिसबाट दक्षिणा पाउन योग्य पात्र भनेका सात किसिमका होता हुन्।

दक्षिणावान्प्रथमो हूत एति दक्षिणावान्ग्रामणीरग्रमेति।
तमेव मन्ये नृपतिं जनानां यः प्रथमो दक्षिणामाविवाय ॥५॥
दानदातालाई सर्वप्रथम आमन्त्रित गरिन्छ, उनीहरू नै प्रधान मानिन्छन्। दक्षिणादाता, दानी ग्रामाध्यक्ष सधैंका अगुवा हुन्छन्। मानिसमध्ये सर्वप्रथम दक्षिणा प्रदान गर्नेलाई नै हामी सबैका पालक राजाको संज्ञा दिनेछौं।

तमेव ऋषिं तमु ब्रह्माणमाहुर्यज्ञन्यं सामगामुक्थशासम्।
स शुक्रस्य तन्वो वेद तिस्रो यः प्रथमो दक्षिणया रराध ॥६॥
सर्वप्रथम दक्षिणादातालाई ज्ञत्वज्ञानी र ब्रह्माको संज्ञा दिइन्छ। उनै यज्ञाध्यक्ष सामगान कर्ता र वेदमन्त्रका स्तोता पनि कहलाउँछन्। यस्ता दानी नै दीप्तिमान् एवं शुद्ध तथा पावन अग्निका तीनै स्वरूपका ज्ञाता हुन् र उनैले सर्वप्रथम अन्न आदिको दक्षिणा दिएर सबैलाई सन्तुष्टि प्रदान गर्दछन्।

दक्षिणाश्वं दक्षिणा गां ददाति दक्षिणा चन्द्रमुत यद्धिरण्यम्।
दक्षिणान्नं वनुते यो न आत्मा दक्षिणां वर्म कृणुते विजानन् ॥७॥

दक्षिणाका रूपमा अश्व, गाई, स्वर्ण, रजत् आदि खुसी लाग्दो धन दान गर्ने र जीवनका लागि उपयोगी अन्न आदि दान गर्नेहरूका लागि यो पुण्यफल सुरक्षा कवचका रूपमा रहेर कष्ट र कठिनाइबाट रक्षा गर्ने हुन्छ।

न भोजा मम्रुर्न न्यर्थमीयुर्न रिष्यन्ति न व्यथन्ते ह भोजाः।
इदं यद्विश्वं भुवनं स्वश्चैतत्सर्वं दक्षिणैभ्यो ददाति ॥८॥

उदारतापूर्वक दान दिने व्यक्ति कहिल्यै मृत्युका मुखमा पर्दैन र उसको दुर्गति हुँदैन। त्यस्तो व्यक्ति दुःख, कष्ट र पीडाबाट मुक्त रहन्छ। यस धर्तीमा रहेका सबै स्वर्गीय सुखका साधन सबै दक्षिणाकै रूपमा प्राप्त हुने गर्दछन्।

भोजा जिग्युः सुरभिं योनिमग्रे भोज जिग्युर्वध्वं१ या सुवासाः।
भोजा जिग्युरन्तः पेयं सुराया भोजा जिग्युर्ये अहूताः प्रयन्ति ॥९॥

उदार दानीले दुध, घिउ प्रदान गर्ने असल गाई प्राप्त गर्छन्। उनले राम्रा लुगा लगाएका सुन्दर वधू प्राप्त गर्दछन्। औषधि आदिको रस प्राप्त गर्दछन्। धोका दिएर आक्रमण गर्ने शत्रुमाथि दानदाताले नै विजय प्राप्त गर्दछन्।

भोजायाश्वं सं मृजन्त्याशुं भोजायास्ते कन्या३ शुम्भमाना।
भोजस्येदं पुष्करिणीव वेश्म परिष्कृतं देवमानेव चित्रम् ॥१०॥

दक्षिणा दाताले शीघ्र गतिमान् अश्व सजाएर भेटीका रूपमा चढाउँछन्। लुगागहनाले सजिएका सेवकसेविका उनलाई प्राप्त हुन्छन्। उनको आवासगृह कमलको फूलले भरिएको तलाउझैं स्वच्छ, निर्मल फूलले सजिएको र देवालयजस्तै पवित्र हुन्छ।

भोजमश्वाः सुष्ठुवाहो वहन्ति सुवृद्रथो वर्तते दक्षिणायाः।
भोजं देवासोऽवता भरेषु भोजः शत्रून्त्समनीकेषु जेता ॥११॥

उत्तम तरिकाले वहन गर्ने अश्वले दातालाई लिएर जान्छ। दानीको रथ पनि गतिला पाङ्ग्रा हालेर बनाएको हुन्छ। युद्धका समयमा देवताले दाताकै संरक्षण गर्दछन्। युद्धभूमिमा दानदाताले नै शत्रुमाथि विजय प्राप्त गर्दछन्।

[सूक्त - १०८]

**ऋषि** – पणि असुरसमूह सरमा देवशुनी। **देवता** – सरमा पणिसमूह। **छन्द** – त्रिष्टुप्।

किमिच्छन्ती सरमा प्रेदमानड् दूरे ह्यध्वा जगुरिः पराचैः।
कास्मेहितिः का परितक्म्यासीत्कथं रसाया अतरः पयांसि ॥१॥

हे सरमा ! कुन इच्छाले प्रेरित भएर तिमी यहाँ उपस्थित भयौ ? यो मार्ग त ज्यादै दुर्गम छ। आएका मार्गमा पछिल्तिर फर्केर हेर्‍यो भने यहाँ आउन सम्भव छैन। हामीसित भएका कुन वस्तु वा शक्तिका लागि तिमीले यहाँ आउनुपर्‍यो ? यस्ता घनघोर रातमा तिमी कसरी आयौ ? पानीरूपी रसप्रवाह कसरी पार गर्‍यौ ?

इन्द्रस्य दूतीरिषिता चरामि मह इच्छन्ती पणयो निधीन्वः।
अतिष्कदो भियसा तन्न आवत्तथा रसाया अतरं पयांसि ॥२॥

हे पणीहरू हो ! म इन्द्रदेवकी दूत बनेर यहाँ आएकी हुँ। तिमीहरूले एकत्र गरेको महिमाशाली गाईरूपी धन पाउने मेरो रहर छ। इन्द्रदेवका डरले मलाई आउन जलले बाटो दियो। यसैले म रसप्रवाह पार गरेर आएकी हुँ।

कीदृङ्ङिन्द्रः सरमे का दृशीका यस्येदं दूतीरसरः पराकात्।
आ च गच्छान्मित्रमेना दधामाथा गवां गोपतिर्नो भवाति ॥३॥

हे सरमा ! तिम्रा स्वामी इन्द्रदेव कस्ता छन् ? उनको पराक्रम कस्तो छ ? उनको दृष्टि कस्तो छ ? तिमी दूत बनेर त्यति टाढाबाट यहाँ आएका इन्द्रलाई हामी मित्रका रूपमा स्वीकार गर्न तयार छौं। हाम्रा गाई लिएर उनै तिनका संरक्षक मात्र होऊन्।

नाहं तं वेद दभ्यं दभत्स यस्येदं दूतीरसरं पराकात्।
न तं गूहन्ति स्रवतो गभीरा हता इन्द्रेण पणयः शयध्वे ॥४॥

अपराजेय इन्द्रदेवको दूत बनेर म अति टाढादेखि यहाँसम्म आएँ। उनी सबैलाई पराजित गर्न सक्षम छन्। तीव्र प्रवाह भएका गहिरा नदीले पनि उनको वेग रोक्न सक्दैनन्। हे पणी हो ! मेरा स्वामी इन्द्रदेवले निश्चय नै तिमीहरूलाई मारेर पसार्छन्।

इमा गावः सरमे या ऐच्छः परि दिवो अन्तान्त्सुभगे पतन्ती।
कस्त एना अव सृजादयुध्व्युतास्माकमायुधा सन्ति तिग्मा ॥५॥

हे सौभाग्यवती सरमा ! तिमी द्युलोकको अन्तिम सीमादेखि यहाँसम्म आइपुगेर गाईको रहर गरेकी छ्यौ तर कुनै पराक्रमीले युद्ध नगरीकनै खोसेर लैजान सक्ला र ? हामीसित पनि अनेकौं खालका तिखा हतियार छन्।

असेन्या वः पणयो वचांस्यनिषव्यास्तन्वः सन्तु पापीः।
अधृष्टो व एतवा अस्तु पन्था बृहस्पतिर्व उभया न मृळात् ॥६॥

हे पणी हो ! तिमीहरूका कुरा सैनिकको गरिमाअनुसारका छैनन्। तिमीहरूको शरीर पापले भरिएको हुनाले बाण चलाउन नसक्ने, पराक्रमरहित छ, त्यसैले तिमीहरूको देवत्व प्राप्तिका लागि हिँड्ने बाटो जान नसकिने होला। बृहस्पतिदेवले तिमीहरूलाई सताऊन् कि भन्ने कुरामा मलाई सन्देह छ। यदि तिमीहरू गाई फिर्ता गर्न तयार छैनौ भनेदेखि अगाडि सङ्कट मात्रै उभिएको होला।

अयं निधिः सरमे अद्रिबुध्नो गोभिरश्वेभिर्वसुभिर्न्यृष्टः।
रक्षन्ति तं पणयो ये सुगोपारेकु पदमलकमा जगन्थ ॥७॥

हे सरमा ! हाम्रा सम्पत्तिको यो कोष अद्रिबुध्न नामका पर्वतले सुरक्षा गरेको छ। त्यो गाई र अन्य धनसम्पदाले परिपूर्ण छ। संरक्षण गर्नमा समर्थ पणीहरूले नै यो कोष सुरक्षा गर्दछन्। गाईको आवाज सुनेर तिमी यहाँ आएको त व्यर्थ भयो।

एह गमन्नृषयः सोमशिता अयास्योअङ्गिरसो नवग्वाः।
त एतमूर्वं वि भजन्त गोनामथैतद्वचः पणयो वमन्नित् ॥८॥

सोमपान गरेर प्रोत्साहित भएपछि नवीन मार्गबाट हिँडेर अङ्गिरा र अयास्य ऋषि यहाँ आइपुग्छन् र यी सबै गाई भाग लगाएर लैजान्छन्। हे पणी हो ! त्यस बेला तिमीहरूको अहङ्कार त्यसै चुर हुनेछ।

एवा च त्वं सरम आजगन्थ प्रबाधिता सहसा दैव्येन।
स्वसारं त्वा कृणवै मा पुनर्गा अप ते गवां सुभगे भजाम ॥९॥

हे सरमा ! देवताका बलकै डरले तिमी यहाँ आइछ्यौ, त्यसो हुँदा हामी दिदीबहिनीझैँ आफन्त ठान्दछौं। तिमी यहाँबाट सोझै इन्द्रदेवकहाँ फिर्ता नजाऊ। हे सौभाग्यवती ! तिमीलाई नै हामी गाईरूपी धनको भाग दिन तयार छौं।

नाहं वेद भ्रातृत्वं नो स्वसृत्वमिन्द्रो विदुरङ्गिरसश्च घोराः।
गोकामा मे अच्छदयन्यदायमपात इत पणयो वरीयः ॥१०॥

हे पणी हो ! म दाजुभाइ भन्ने भावनाको सम्बन्ध जान्दिनँ र मलाई कसैको दिदीबहिनी बन्नुपरेको पनि छैन। इन्द्रदेव र अत्यन्त भयङ्कर अङ्गिरसले नै यस विषयमा गर्नुपर्ने सबै कुरो जानेका छन्। यस ठाउँबाट यदि म इन्द्रकहाँ फिर्ता जानुपऱ्यो भने मैले भनेझैं तिमीहरूमाथि आक्रमण गर्नेछन्। त्यसैले हे पणी हो ! तिमीहरू यहाँबाट भागेर निकै टाढा जाओ।

दूरमित पणयो वरीय उद्गावो यन्तु मिनतीर्ऋतेन।
बृहस्पतिर्या अविन्दन्निगूळ्हाः सोमो ग्रावाण ऋषयश्च विप्राः ॥११॥

हे पणी हो ! तिमीहरू यहाँबाट अति टाढा भाग। गाईले दुःख पाएका छन्, आफ्ना तेजले अन्धकार नाश गर्दै ती गाई पर्वतभन्दा माथि पुगून्। बृहस्पति, सोम, सोमरस पेल्ने ढुङ्गा, ऋषि र मेधावीजले अति गोप्य तरिकाले तिमीहरूले लुकाइराखेका गाईका विषयमा जानकारी पाइसकेका छन्।

[सूक्त – १०९]

ऋषि – जुहू ब्रह्मजाया। देवता – विश्वदेवा। छन्द – त्रिष्टुप् अनुष्टुप्।

**तेऽवदन्प्रथमा ब्रह्मकिल्बिषेऽकूपारः सलिलो मातरिश्वा।**
**वीडुहरास्तप उग्रो मयोभूरापो देवीः प्रथमजा ऋतेन ॥१॥**

उनीहरूले पहिले ब्रह्म किल्विषका रूपमा सृष्टिका विषयमा चर्चा गरे। उग्र तपभन्दा पहिले दिव्य आपः र सोमरूपी मूल एवं सक्रिय तत्त्व प्रकट भए। टाढा रहेका सूर्य, जल र वायु तेजसम्पन्न भए।

**सोमो राजा प्रथमो ब्रह्मजायां पुनः प्रायच्छदहृणीयमानः।**
**अन्वर्तिता वरुणो मित्र आसीदग्निर्होता हस्तगृह्या निनाय ॥२॥**

सङ्कोच त्यागेर राजा सोमले पवित्र चरित्र भएकी ब्रह्मजाया बृहस्पतिलाई प्रदान गरे। मित्रावरुणले यो कार्य समर्थन गरे। त्यसपछि यज्ञ सम्पन्न गराउने अग्निदेवले हातमा पक्रेर उनलाई अगाडि लिएर आए।

**हस्तेनैव ग्राह्य आधिरस्या ब्रह्मजायेयमिति चेदवोचन्।**
**न दूताय प्रह्ये तस्थ एषा राष्ट्रं गुपितं क्षत्रियस्य ॥३॥**

हे बृहस्पतिदेव ! यिनलाई हातले स्पर्श गर्नु उचित नै हुनेछ। किनभने यिनी ब्रह्मजाया हुन् भनेर सबै देवताले भने। यिनलाई खोज्नका लागि दूत बनाएर पठाइएकाप्रति यिनको आसक्ति भाव थिएन। शक्तिशाली राजाको राज्य सुरक्षित रहेझैं यिनको पनि चरित्रनिष्ठा अडिग रहेको छ।

**देवा एतस्यामवदन्त पूर्वे सप्तऋषयस्तपसे ये निषेदुः।**
**भीमा जाया ब्राह्मणस्योपनीता दुर्धां दधाति परमे व्योमन् ॥४॥**

तपस्यामा लागेका सप्तर्षिहरू र उहिलेका देवताले पनि यी ब्राह्मणद्वारा ग्रहण गरिएकी कन्या अति सामर्थ्यवान् छन् भनेर यिनका विषयमा घोषणा गरेका थिए। यिनले परम व्योममा दुर्लभ शक्ति धारण गर्दछिन्।

**ब्रह्मचारी चरति वेविषद्विषः स देवानां भवत्येकमङ्गम्।**
**तेन जायामन्वविन्दद् बृहस्पतिः सोमेन नीतां जुह्वं न देवाः ॥५॥**

हे देवता हो ! सर्वव्यापी बृहस्पतिदेव विरक्त भएर ब्रह्मचर्य नियम निर्वाह गर्दै सर्वत्र विचरण गर्छन्। उनी देवतासँग एकाकार छन् र देवताकै अङ्गअवयवजस्ता छन्। सबैभन्दा पहिले सोमका हातबाट जुहु प्राप्त गरेझैं बृहस्पतिले यिनलाई प्राप्त गरे।

**पुनर्वै देवा अददुः पुनर्मनुष्या उत।**
**राजानः सत्यं कृण्वाना ब्रह्मजायां पुनर्ददुः ॥६॥**

देवता र मानिसले बारम्बार बृहस्पतिदेवलाई उनकी पत्नी समर्पित गरे। सत्यनिष्ठ राजाले पनि चरित्रसम्पन्न उनकी पत्नी उनलाई प्रदान गरे।

**पुनर्दाय ब्रह्मजायां कृत्वी देवैर्निकिल्बिषम्।**
**ऊर्जं पृथिव्या भक्त्वायोरुगायमुपासते ॥७॥**

चरित्रनिष्ठ पत्नी फेरि दिएर देवताले बृहस्पतिलाई दोषमुक्त गराए। त्यसपछि पृथ्वीको सर्वोत्तम अन्न विभाजन गरेर सबैले सुखपूर्वक यज्ञीय उपासना गर्न थाले।

[सूक्त – ११०]

ऋषि – जमदग्नि। देवता – आप्रीसूक्त। छन्द – त्रिष्टुप्।

**समिद्धो अद्य मनुषो दुरोणे देवो देवान्यजसि जातवेदः।**
**आ च वह मित्रमहश्चिकित्वान्त्वं दूतः कविरसि प्रचेताः ॥१॥**

हे सबै प्राणीका हितैषि मित्र र अग्निदेव ! तिमी महान् गुणले सम्पन्न भएर प्रज्वलित होऊ। कुशल याजकले निर्धारण गरेका यज्ञमण्डपमा देवता बोलाऊ र यजन गर। तिमी श्रेष्ठ चेतनायुक्त, विद्वान् र देवताका दूत हौ।

**तनूनपात्पथ ऋतस्य यानान्मध्वा समञ्जन्त्स्वदया सुजिह्व।**
**मन्मानि धीभिरुत यज्ञमृन्धन्देवत्रा च कृणुह्यध्वरं नः ॥२॥**

शरीरका रक्षक र श्रेष्ठ वाणी भएका हे अग्निदेव ! तिमी सत्यरूप यज्ञको मार्ग वाणीका मिठासले सुसङ्गत गर्दै हवि ग्रहण गर। विचारपूर्वक ज्ञान र यज्ञ देवताका लागि ग्रहण गरेर उनीहरूसम्म पुऱ्याइदेऊ।

आजुह्वान ईड्यो वन्द्यश्चा याह्यग्ने वसुभिः सजोषाः।
त्वं देवानामसि यह्व होता स एनान्यक्षीषितो यजीयान् ॥३॥

देवता बोलाउने हे अग्निदेव ! तिमी प्रार्थनायोग्य, वन्दनीय र वसुजस्तै प्रेम गर्ने हौ। तिमी देवताका होताका रूपमा यहाँ आएर उनीहरूकै लागि यज्ञ गर।

प्राचीनं बर्हिः प्रदिशा पृथिव्या वस्तोरस्या वृज्यते अग्रे अह्नाम्।
व्यु प्रथते वितरं वरीयो देवेभ्यो अदितये स्योनम् ॥४॥

दिनको थालनीमा भूमि छोप्ने कुश ज्यादै उत्तम छ। यो देवता र अदितिले सुखपूर्वक बस्नका लागि योग्य छ। यसलाई यज्ञवेदी ढाक्नका लागि फिँजाइन्छ।

व्यचस्वतीरुर्विया वि श्रयन्तां पतिभ्यो न जनयः शुम्भमानाः।
देवीर्द्वारो बृहतीर्विश्वमिन्वा देवेभ्यो भवत सुप्रायणाः ॥५॥

पतिव्रता स्त्रीले पतिको उन्नति गराएझैं देवत्वले सम्पन्न द्वारका रूपमा रहेका देवीहरू सबैले आवतजावत गर्नका लागि खाली ठाउँमा मार्ग प्रदान गर्ने हुनाले सजिलैसित देवत्व प्राप्त गर्न सक्ने हुन्छन्।

आ सुष्वयन्ती यजते उपाके उषासानक्ता सदतां नि योनौ।
दिव्ये योषणे बृहती सुरुक्मे अधि श्रियं शुक्रपिशं दधाने ॥६॥

यज्ञभागका अधिकारिणी उषा र रात्रि दुवै देवी मानिसका लागि विभिन्न किसिमका सुख प्रकट गर्दछन्। उनीहरू यज्ञस्थलमा आएर प्रतिष्ठित होऊन्। ती दिव्यलोक वासिनी दुवै देवी अति गुणवती, श्रेष्ठ आभूषण आदिले शोभायुक्त, उज्ज्वल, तेजस्वी स्वरूप भएका र सौन्दर्य धारण गर्ने खालका छन्।

दैव्या होतारा प्रथमा सुवाचा मिमाना यज्ञं मनुषो यजध्यै।
प्रचोदयन्ता विदथेषु कारू प्राचीनं ज्योतिः प्रदिशा दिशन्ता ॥७॥

दिव्य गुणले सम्पन्न होता, अग्निदेव र आदित्यगण सर्वश्रेष्ठ वेदमन्त्रका ज्ञाता र मानिसका लागि यज्ञ रचना गर्दछन्। उनी देवताको पूजा गर्न यज्ञीय अनुष्ठानका प्रेरक, कर्मकुशल, स्तुतिकर्ता हुन् र पूर्व दिशामा राम्रोसित प्रकाश प्रकट गराउँछन्।

आ नो यज्ञं भारती तूयमेत्विडा मनुष्वदिह चेतयन्ती।
तिस्रो देवीर्बर्हिरेदं स्योनं सरस्वती स्वपसः सदन्तु ॥८॥

भारती देवी हाम्रा यज्ञमा चाँडै आइदिऊन्। यस यज्ञको कुरो बुझेर इडा देवी मानिसझैं यहाँ आऊन् र देवी सरस्वती पनि चाँडै आऊन्। सत्कर्मशील यी तीन देवीहरू यस यज्ञमा आएर सुखकारी आसनमा बसून्।

य इमे द्यावापृथिवी जनित्री रूपैरपिंशद्भुवनानि विश्वा।
तमद्य होतरिषितो यजीयान्देवं त्वष्टारमिह यक्षि विद्वान् ॥९॥

हे होता हो ! द्यावापृथिवीले उत्पादन गर्दछन्। उनलाई त्वष्टादेवले सजाए। तिमीहरू ज्ञानवान्, श्रेष्ठ कामनायुक्त र यज्ञशील छौ। त्यसैले आज यस यज्ञमा उनै त्वष्टादेवको अर्चना उचित किसिमले गर।

उपावसृज त्मन्या समञ्जन्देवानां पाथ ऋतुथा हवींषि।
वनस्पतिः शमिता देवो अग्निः स्वदन्तु हव्यं मधुना घृतेन ॥१०॥

हे यज्ञको स्तम्भरूपी यूपदेवता ! तिमी आफ्नै सामर्थ्यले देवताका लागि अन्न आदि अन्य यजनीय पदार्थ असल तरिकाले ल्याएर उचित समयमा प्रस्तुत गर। वनस्पतिदेव, शमितादेव र अग्निदेव मधुर घिउ आदिका साथ यजनीय हविष्यान्न सेवन गरून्।

सद्यो जातो व्यमिमीत यज्ञमग्निर्देवानामभवत्पुरोगाः।
अस्य होतुः प्रदिश्यृतस्य वाचि स्वाहाकृतं हविरदन्तु देवाः ॥११॥

प्रदीप्त हुनासाथ अग्निदेवले यज्ञीय भावना प्रकट गरे र देवताका अगुवा दूत बने। यस यज्ञका प्रमुख स्थानमा होताको भावनाअनुसार वेदका मन्त्र उच्चारण होऊन्। स्वाहा शब्दसँगै यज्ञका अग्निमा समर्पित गरिएको हविष्यान्न देवताले ग्रहण गरून्।

## [सूक्त - १११]

**ऋषि** – अष्ट्रादंष्ट्र वैरूप। **देवता** – इन्द्र। **छन्द** – त्रिष्टुप्।

**मनीषिणः प्र भरध्वं मनीषां यथायथा मतयः सन्ति नृणाम्।**
**इन्द्रं सत्यैरेरयामा कृतेभिः स हि वीरो गिर्वणस्युर्विदानः ॥१॥**

हे स्तोता हो ! जुन रूपमा मानिसका बुद्धिको स्तर बढ्दछ, उसैअनुसार तिमीहरू स्तुतिपाठ गर। हामी असल स्तुतिले इन्द्रदेवलाई आफूतर्फ आकृष्ट गर्दछौं। शूरवीर र ज्ञानवान् इन्द्रदेव स्तोत्रको अभिप्राय जानेर स्तोता साधकलाई माया गर्नेछन्।

**ऋतस्य हि सदसो धीतिरद्यौत्सं गार्ष्टेयो वृषभो गोभिरानट्।**
**उदतिष्ठत्तविषेणा रवेण महान्ति चित्सं विव्याचा रजांसि ॥२॥**

अन्तरिक्ष धारण गर्ने इन्द्रदेव प्रकट हुन्छन्। तरुण गाईका गर्भबाट उत्पन्न साँढे गाईसँगै मिलेझैं इन्द्रदेव सर्वत्र व्याप्त छन्। गर्जनका साथै उनी सबैभन्दा माथि विराजमान हुन्छन् र विस्तृत लोकहरूमा पनि व्याप्त हुन्छन्।

**इन्द्रः किल श्रुत्या अस्य वेद स हि जिष्णुः पथिकृत्सूर्याय।**
**आन्मेनां कृण्वन्नच्युतो भुवद्गोः पतिर्दिवः सनजा अप्रतीतः ॥३॥**

यस स्तोत्रको लक्ष्य इन्द्रदेव नै हुन्। विजयशील पनि उनै हुन् र उनैले सूर्यदेवको मार्ग पनि प्रशस्त गराएका हुन्। अविनाशी र विजयी इन्द्रदेवले सेना उत्पन्न गरे र त्यसपछि यज्ञमा प्रवेश गरे। स्वर्गका अधिपति र गाईका संरक्षक उनै हुन्। उनी शाश्वत र सर्वाधिक सामर्थ्यशाली छन्।

**इन्द्र मह्ना महतो अर्णवस्य व्रतामिनादङ्गिरोभिर्गृणानः।**
**पुरूणि चित्रि तताना रजांसि दाधार यो धरुणं सत्यताता ॥४॥**

अङ्गिराहरूले स्तुति गर्दा प्रसन्न भएर इन्द्रले जल भरिएको मेघ आफ्ना सामर्थ्यले भताभुङ्ग गरे। उनैले जलराशि निर्माण गरे। द्युलोकलाई धारण गर्ने शक्ति प्रदान गरे।

**इन्द्रो दिवः प्रतिमानं पृथिव्या विश्वा वेद सवना हन्ति शुष्णम्।**
**महीं चिद्द्यामातनोत्सूर्येण चास्कम्भ चित्कम्भनेन स्कभीयान् ॥५॥**

इन्द्रदेव द्युलोक र भूलोक दुवैका अधिपति हुन्। उनी समस्त यज्ञका ज्ञाता पनि हुन्। उनी जलप्रवाहमा बाधक शुष्णलाई विनाश गर्दछन्। उनी सूर्यदेवद्वारा व्यापक आकाश र धर्तीलाई आलोकित गराउँछन्। सर्वश्रेष्ठ धारकका रूप मानिएका उनले स्तम्भद्वारा अन्तरिक्षलाई माथि धारण गरेका छन्।

**वज्रेण हि वृत्रहा वृत्रमस्तरदेवस्य शूशुवानस्य मायाः।**
**वि धृष्णो अत्र धृषता जघन्थाथाभवो मघवन्बाह्वोजाः ॥६॥**

हे इन्द्रदेव ! तिमी वृत्रहन्ता हौ। तिमीले नै वज्रको प्रहारले वृत्रासुर संहार गरेका थियौ। हे इन्द्रदेव ! यज्ञविरोधी वृत्रासुर अगाडि बढ्दै आउँदा त्यसको कुटिल माया समर्थ वज्रले तिमीले नष्ट गरायौ। हे ऐश्वर्यशाली इन्द्रदेव ! तिमी पराक्रमले सम्पन्न भयौ।

**सचन्त यदुषसः सूर्येण चित्रामस्य केतवो रामविन्दन्।**
**आ यन्नक्षत्रं ददृशे दिवो न पुनर्यतो नकिरद्धा नु वेद ॥७॥**

उषाहरू सूर्यदेवसँगै रहँदा सूर्यको किरण विलक्षण वर्णमा शोभायमान भइरहेको हुन्छ। अनि फेरि आकाशमा नक्षत्र देखिन छोडेपछि सर्वत्रगामी सूर्यदेवको मर्म कसैले पनि बुझेर सक्दैन भन्ने कुरो सत्य हो।

**दूरं किल प्रथमा जग्मुरासामिन्द्रस्य याः प्रसवे सस्रुरापः।**
**क्व स्विदग्रं क्व बुध्न आसामापो मध्यं क्व वो नूनमन्तः ॥८॥**

इन्द्रदेवका निर्देशले प्रवाहित जल तत्त्व प्रारम्भिक स्थितिमा नै अति टाढा पुगेको थियो। हे आपः ! तिम्रो पहिलो थालनीको कहाँ हो ? मूलभाग कहाँ छ ? मध्यभाग कहाँ छ ? र अन्तिम भाग कहाँ छ खै ?

**सृजः सिन्धूँरहिना जग्रसानाँ आदिदेताः प्र विविज्रे जवेन।**
**मुमुक्षमाणा उत या मुमुच्रेऽधेदेता न रमन्ते नितिक्ताः ॥९॥**

हे इन्द्रदेव ! वृत्रासुरले रोकेका जलधारा तिमीले मुक्त गराउँदा तिनीहरू अति वेगपूर्वक सर्वत्र

प्रवाहित हुन लागे। तिमीले आफ्ना अभिलाषाले जल खोल्दा स्वच्छ जल तीव्र वेगले प्रवाहित भयो। एका ठाउँमा अडिन पनि सकेन।

**सध्रीचीः सिन्धुमुशतीरिवायन्त्सनाज्जार आरितः पूर्भिदासाम्।**
**अस्तमा ते पार्थिवा वसून्यस्मे जग्मुः सूनृता इन्द्र पूर्वीः ॥१०॥**

एकापसमा सँगसँगै बग्ने नदी मायाजालमा फँसेका स्त्रीजस्तै भएर समुद्रतर्फ जान्छन्। शत्रु परास्त गरेर उनको सहर भत्काउने इन्द्रदेव सबै जलराशिका अधिपति हुन्। हे इन्द्रदेव ! हामीलाई पृथ्वीका विभिन्न ऐश्वर्यसम्पदा, मधुर स्तोत्र र उत्तम आवास उपलब्ध होस्।

## [सूक्त - ११२]

**ऋषि** - नभ प्रभेदन वैरूप। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

**इन्द्र पिब प्रतिकामं सुतस्य प्रातः सावस्तव हि पूर्वपीतिः।**
**हर्षस्व हन्तवे शूर शत्रूनुक्थेभिष्टे वीर्या३ प्र ब्रवाम ॥१॥**

हे इन्द्रदेव ! पेलेर तयार गरेको सोमरस तिमी मन लागेजति खाऊ। बिहानीपख तयार हुने सोम सबैभन्दा पहिले तिमीले नै खान योग्य हुन्छ। हे शूरवीर इन्द्रदेव ! तिमी शत्रु संहार गर्न उत्साहित होऊ। तिम्रा पराक्रमी कर्मको बयान हामी वेदमन्त्रले गर्नेछौं।

**यस्ते रथो मनसो जवीयानेन्द्र तेन सोमपेयाय याहि।**
**तूयमा ते हरयः प्र द्रवन्तु येभिर्यासि वृषभिर्मन्दमानः ॥२॥**

हे इन्द्र ! मनको गतिभन्दा तेज रूपमा चल्ने रथमा सोमपान गर्न यहाँ आऊ। आनन्द र सहयोग प्रदान गर्ने हरिया अश्वमा तिमी तीव्र वेगका साथ हामीकहाँ आऊ।

**हरित्वता वर्चसा सूर्यस्य श्रेष्ठै रूपैस्तन्वं स्पर्शयस्व।**
**अस्माभिरिन्द्र सखिभिर्हुवानः सध्रीचीनो मादयस्वा निषद्य ॥३॥**

हे इन्द्रदेव ! तिमी सुनौला सूर्यको तेजजस्तै श्रेष्ठतम स्वरूपमा शरीर सजाऊ। हामी मित्रले आह्वान गर्दा देवताहरूसँग यज्ञमा प्रतिष्ठित भएर सोमपानले आनन्दित होऊ।

**यस्य त्यत्ते महिमानं मदेष्विमे मही रोदसी नाविविक्ताम्।**
**तदोक आ हरिभिरिन्द्र युक्तैः प्रियेभिर्याहि प्रियमन्नमच्छ ॥४॥**

हे इन्द्रदेव ! सोमपान गरेर प्रोत्साहित भएपछि द्यावापृथिवीले पनि धारण गर्न नसक्ने गरी तिम्रो महिमा गाउँछौं। आफ्ना प्रीतियुक्त अश्व रथमा जोडेर स्नेहयुक्त अन्न र सोमयुक्त यज्ञसामग्रीको लक्ष्य लिएर तिमी हाम्रा यज्ञस्थलमा आऊ।

**यस्य शश्वत्पपिवाँ इन्द्र शत्रूननानुकृत्या रण्या चकर्थ।**
**स ते पुरन्धिं तविषीमियर्ति स ते मदाय सुत इन्द्र सोमः ॥५॥**

हे इन्द्रदेव ! जसको सोमपान गर्दाखेरि तिमी आश्चर्यजनक युद्धमा काम लाग्ने सामर्थ्यले हर्षित भएर बारम्बार शत्रु संहार गर्दछौ, ती यजमान नै तिम्रा लागि अभीष्ट स्तोत्रले प्रेरित गर्दछन्। तिम्रै खुसीका लागि सोमरस पेलिएको हो।

**इदं ते पात्रं सनवित्तमिन्द्र पिबा सोममेना शतक्रतो।**
**पूर्ण आहावो मदिरस्य मध्वो यं विश्व इदभिहर्यन्ति देवाः ॥६॥**

सयौं यज्ञ गरिसकेका हे इन्द्रदेव ! उहिलेदेखिका सोमपात्रमै तिमी सोमपान गर। तिनको अभिलाषा सारा देवताले पनि गर्दछन्। ती पात्र प्रोत्साहन दिने खालको मिठो सोमरसले भरिएका छन्।

**वि हि त्वामिन्द्र पुरुधा जनासो हितप्रयसो वृषभ ह्वयन्ते।**
**अस्माकं ते मधुमत्तमानीमा भुवन्त्सवना तेषु हर्य ॥७॥**

हे अभीष्ट वर्षा गराउने इन्द्रदेव ! हविष्यान्न समर्पित गर्दै यजमानहरू विभिन्न किसिमले तिम्रो स्तुति गर्दछन् र सोमपानका लागि आह्वान गर्दछन्। हाम्रो यो यज्ञकर्म तिम्रा लागि नै मधुर सोमरस युक्त छ। यसैबाट चाहिएजति आनन्द प्राप्त गर।

**प्र त इन्द्र पूर्व्याणि प्र नूनं वीर्या वोचं प्रथमा कृतानि।**
**सतीनमन्युरश्रथायो अद्रिं सुवेदनामकृणोर्ब्रह्मणे गाम् ॥८॥**

हे इन्द्रदेव ! चिरकालदेखि नै तिमीले गरेका पराक्रमपूर्ण प्रदर्शनका महिमाको वर्णन हामी गर्दछौं। जल वर्षाका लागि तिमीले मेघलाई वज्रले भत्कायौ र स्तोताका लागि गाई प्राप्त गर्न सजिलो बनायौ।

नि षु सीद गणपते गणेषु त्वामाहुर्विप्रतमं कवीनाम्।
न ऋते त्वत्क्रियते किंचनारे महामर्कं मघवञ्चित्रमर्च ॥९॥

सङ्घका अधिपति हे इन्द्रदेव ! तिमी स्तोताका बीचमा स्तोत्र सुन्नका लागि विराजमान छौ। विद्वान्हरू तिमीलाई सबैभन्दा उत्तम ज्ञानले सम्पन्न ठान्दछन्। नजिकै वा टाढाकै पनि जुनसुकै अनुष्ठान तिमीविना पूरा गर्न सम्भव छैन। हे वैभवशाली इन्द्रदेव ! हाम्रो स्तुति तिमी विभिन्न रूपले विस्तृत गराऊ।

अभिख्या नो मघवन्नाधमानान्त्सखे बोधि वसुपते सखीनाम्।
रणं कृधि रणकृत्सत्यशुष्माभक्ते चिदा भजा राये अस्मान् ॥१०॥

हे वैभवशाली इन्द्रदेव ! हामी याजकलाई तिमी तेजस्वी बनाऊ। धनका अधिपति र मित्रजस्ता हे इन्द्रदेव ! मित्रताको भावनाले युक्त भएर हाम्रो स्तुति बुझ। युद्धकलामा कुशल हे इन्द्रदेव ! सत्य नै तिम्रो बल हो, हामीलाई दुर्लभ ऐश्वर्य प्रदान गर।

[सूक्त - ११३]

**ऋषि** - शत प्रभेदन वैरूप। **देवता** - इन्द्र। **छन्द** - जगती त्रिष्टुप्।

तमस्य द्यावापृथिवी सचेतसा विश्वेभिर्देवैरनु शुष्ममावताम्।
यदैत्कृण्वानो महिमानमिन्द्रियं पीत्वी सोमस्य क्रतुमाँ अवर्धत ॥१॥

समस्त देवतासँग चेतन द्यावापृथिवीले इन्द्रदेवका सामर्थ्यको रक्षा गरुन्। महान् कार्य सम्पन्न गर्ने इन्द्रदेव आफ्ना सामर्थ्यले महिमा प्राप्त गर्दै सोमपान गरेपछि वृद्धि हुन्छन्।

तमस्य विष्णुर्महिमानमोजसांशुं दधन्वान्मधुनो वि रप्शते।
देवेभिरिन्द्रो मघवा सयावभिर्वृत्रं जघन्वाँ अभवद्वरेण्यः ॥२॥

विष्णुदेवले मधुर सोमरसको अंश प्रेरित गरे। यसका ओजबाट विकसित इन्द्रदेवको महिमा अनेक किसिमले स्तुतिगान गरिन्छ। ऐश्वर्यशाली इन्द्रदेवले सहायक देवतासँग एकत्र भएर वृत्रासुरको संहार गरेर सर्वश्रेष्ठ पद प्राप्त गरे।

वृत्रेण यदहिना बिभ्रदायुधा समस्थिथा युधये शंसमाविदे।
विश्वे ते अत्र मरुतः सह त्मनावर्धन्नुग्र महिमानमिन्द्रियम् ॥३॥

सङ्ग्रामका लागि आयुध धारण गर्ने इन्द्रदेव प्रतिरोध गर्ने वृत्रासुर शत्रुसित युद्ध गर्छन्। त्यस बेला बढिरहेका उनका ख्यातिको वर्णन सबैले गर्दछन्। हे पराक्रमी इन्द्रदेव ! यस्ता बेलामा तिम्रो महान् सामर्थ्य र महिमा सबै मरुत्हरूले बढाउँछन्।

जज्ञान एव व्यबाधत स्पृधः प्रापश्यद्वीरो अभि पौंस्यं रणम्।
अवृश्चदद्रिमव सस्यदः सृजदस्तभ्नान्नाकं स्वपस्यया पृथुम् ॥४॥

जन्मकालदेखि नै शत्रुलाई दुःख दिने वीर पराक्रमी इन्द्रदेव सङ्ग्रामका विषयको विचार गर्दै आफ्नो शौर्य बढाउँछन्। उनले जल वर्षा गराउन मेघ छिन्नभिन्न गराए र सँगै प्रवाहित हुने जलधारा ओरालोतिर बगाए। उनले आफ्ना कर्मका कौशलले व्यापक स्वर्ग पनि स्थिर गराए।

आदिन्द्रः सत्रा तविषीरपत्यत वरीयो द्यावापृथिवी अबाधत।
अवाभरद्धृषितो वज्रमायसं शेवं मित्राय वरुणाय दाशुषे ॥५॥

इन्द्रदेव विशाल शत्रुसेनातर्फ अचानक कुदे। आफ्ना विशेष महत्ताले उनले द्युलोक र भूलोक नियन्त्रित गरे। दानशील मित्रावरुणलाई सुख प्रदान गर्ने वज्रास्त्र इन्द्रदेवले शत्रु संहार गर्नका लागि विकराल रूपमा लिए।

इन्द्रस्यात्र तविषीभ्यो विरप्शिन ऋघायतो अरंहयन्त मन्यवे।
वृत्रं यदुग्रो व्यवृश्चदोजसापो बिभ्रतं तमसा परीवृतम् ॥६॥

इन्द्रदेव विभिन्न किसिमले भयङ्कर गर्जना गर्दै शत्रु संहार गर्दछन्। उनका पराक्रमको उद्घोष गर्दै जल प्रवाहित भयो। बलशाली वृत्रासुरले अन्धकारमा जल थुनेर राखेको थियो, तर महान् तेजस्वी इन्द्रदेवका आफ्ना सामर्थ्यले वृत्रासुर संहार गरे।

या वीर्याणि प्रथमानि कर्त्वा महित्वेभिर्यतमानौ समीयतुः।
ध्वान्तं तमोऽव दध्वसे हत इन्द्रो मह्ना पूर्वहूतावपत्यत ॥७॥

आआफ्नो सामर्थ्य र वीरता प्रदर्शन गर्दै इन्द्रदेव र वृत्रासुर क्रोधित भएर आपसमा युद्ध गर्न लागे।

वृत्रासुरको संहारसँगै भयङ्कर अन्धकार विनाश भयो। वीरको गणना गर्ने बेलामा सबैभन्दा पहिले इन्द्रदेवको नाम लिनुपर्ने उनको विशेषता छ।

**विश्वे देवासो अध वृष्ण्यानि तेऽवर्धयन्त्सोमवत्या वचस्यया।**
**रद्धं वृत्रमहिमिन्द्रस्य हन्मनाग्निर्न जम्भैस्तृष्वन्नमावयत् ॥८॥**

हे इन्द्रदेव ! वृत्रहनन गरिसकेपछि सबै याज्ञिक र स्तोता, सोमसहित स्तुति गर्दै तिम्रो सामर्थ्य बढाउन लागे। इन्द्रदेवका वज्रका प्रहारले प्रताडित दुर्द्धर्ष वृत्रासुरको विनाश हुनाले दुनियाँले प्रसन्नतापूर्वक अग्निदेवले हविष्यान्न ग्रहण गरे।

**भूरि दक्षेभिर्वचनेभिर्ऋक्वभिः सख्येभिः सख्यानि प्र वोचत।**
**इन्द्रो धुनिं च चुमुरिं च दम्भयञ्छ्रद्धामनस्या शृणुते दभीतये ॥९॥**

हे स्तोता हो ! इन्द्रदेवले मित्रभावले श्रेष्ठ कार्य सम्पन्न गरेका हुन्। उनको स्तुति श्रेष्ठतम वाक्य र बन्धुत्वका भावले वेदमन्त्रद्वारा गर। इन्द्रदेवले दभीति नरेशका लागि धुनी र चुमुरी नामका राक्षस संहार गरे। उनी श्रद्धायुक्त श्रेष्ठ स्तुति सुन्दछन्।

**त्वं पुरूण्या भरा स्वश्व्या येभिर्मंसै निवचनानि शंसन्।**
**सुगेभिर्विश्वा दुरिता तरेम विदो षु ण उर्विया गाधमद्य ॥१०॥**

हे इन्द्रदेव ! हामीले स्तोत्र पाठ गर्ने बेलामा विपुल सम्पत्ति र श्रेष्ठ अश्वयुक्त ऐश्वर्यको आशा गरेका थियौँ। हामीलाई त्यो सबै प्रदान गर। उनै श्रेष्ठ ऐश्वर्य अथवा स्तोत्रले हामी सबै खालका अनिष्ट निवारण गर्नेछौँ। हामीले आज निर्माण गरेका स्तोत्र तिमी प्रीतिपूर्वक स्वीकार गर।

## [सूक्त - ११४]

**ऋषि** – सध्रि वैरूप अथवा घर्म तापस। **देवता** – विश्वेदेवा। **छन्द** – त्रिष्टुप् जगती।

**घर्मा समन्ता त्रिवृतं व्यापतुस्तयोर्जुष्टिं मातरिश्वा जगाम।**
**दिवस्पयो दिधिषाणा अवेषन्विदुर्देवाः सहसामानमर्कम् ॥१॥**

चारैतिर अग्निदेव र आदित्यदेव आलोकित भएर तीनै लोक व्याप्त गराए। अन्तरिक्षमा रहेका वायुदेवले उनीहरूको प्रसन्नता प्राप्त गरे। सम्पूर्ण तेजले युक्त स्तुत्य सूर्यदेवको तेज देवताले उपलब्ध गर्दा उनले तीनै लोक संरक्षण गर्न अन्तरिक्षमा जल रचना गरे।

**तिस्रो देष्ट्राय निर्ऋतीरुपासते दीर्घश्रुतो वि हि जानन्ति वह्नयः।**
**तासां नि चिक्युः कवयो निदानं परेषु या गुह्येषु व्रतेषु ॥२॥**

साधकहरू पृथ्वी, अन्तरिक्ष र द्युलोकमा रहेका अग्नि, वायु र सूर्यदेवलाई हविष्यान्न समर्पित गर्दै उपासना गर्दछन्। कीर्तिवान् अग्निदेवको परिचय देवताले प्राप्त गर्छन्। विद्वान् साधक, अग्निदेवका मूल उत्पत्तिका ज्ञाता हुन्। परम गोप्य व्रतको मूल कारण पनि उनैले जान्दछन्।

**चतुष्कपर्दा युवतिः सुपेशा घृतप्रतीका वयुनानि वस्ते।**
**तस्यां सुपर्णा वृषणा नि षेदतुर्यत्र देवा दधिरे भागधेयम् ॥३॥**

एउटा यज्ञवेदी चार कुना भएको छ। त्यसको स्वरूप श्रेष्ठ र घिउ आदिले चिल्लो भएको छ। श्रेष्ठ यज्ञले सामग्रीरूपी वस्त्र धारण गर्दछ। यजमान र पुरोहितरूपी दुई वटा चरा विराजमान भएपछि यज्ञवेदीमा अग्नि आदि देवशक्तिले आआफ्नो हविष्यको भाग ग्रहण गर्दछन्।

**एकः सुपर्णः स समुद्रमा विवेश स इदं विश्वं भुवनं वि चष्टे।**
**तं पाकेन मनसापश्यमन्तितस्तं माता रेळ्हि स उ रेळ्हि मातरम् ॥४॥**

एउटा पक्षी ब्रह्माण्डरूपी समुद्रमा सञ्चार गर्दै प्रवेश हुन्छ। त्यसैले समस्त संसार विशिष्ट रूपले हेर्दछ। त्यस प्राणवायुलाई उपासना आदि गर्दै प्रखर बुद्धिले हामी नजिकैबाट देख्दछौँ। त्यसको र मातारूपी वाणीको मिलन हुने स्थितिमा माताले प्रेमपूर्वक त्यसको आस्वादत गरिन् र निश्चित पनि त्यो माताका स्नेहले युक्त भयो।

**सुपर्णं विप्राः कवयो वचोभिरेकं सन्तं बहुधा कल्पयन्ति।**
**छन्दांसि च दधतोअध्वरेषु ग्रहान्त्सोमस्य मिमते द्वादश ॥५॥**

श्रेष्ठ पालनकर्ता अद्वितीय परमेश्वरका सम्बन्धमा मेधावीहरू विभिन्न दृष्टिकोणले कल्पना गर्दछन्। उनीहरू यज्ञमा विविध छन्दको उच्चारण गर्दै बाह्र किसिमका उपांशु, अन्तर्यामा आदि सोमपात्रको निर्माण गर्दछन्।

षट्त्रिंशाँश्च चतुरः कल्पयन्तश्छन्दांसि च दधत आद्वादशम्।
यज्ञं विमाय कवयो मनीष ऋक्सामाभ्यां प्र रथं वर्तयन्ति ॥६॥
चालीस किसिमका सोमपात्रलाई मेधावीहरू बाह्र किसिमका छन्दमा आबद्ध मन्त्रको उच्चारण गर्दै स्थापित गर्दछन्। यस किसिमले विचारपूर्वक यज्ञको अनुष्ठान गरेर ऋक् र सामद्वारा यज्ञीय रथ गतिवान् गराउँछन्।

चतुर्दशान्ये महिमानो अस्य तं धीरा वाचा प्र णयन्ति सप्त।
आप्नानं तीर्थं क इह प्र वोचद्येन पथा प्रपिबन्ते सुतस्य ॥७॥
यज्ञरूपी परमेश्वरका चौध वटा महिमारूपी भुवन छन्। सात वटा होताले स्तोत्र उच्चारण गरेर यज्ञीय कार्य सम्पन्न गराउँछन्। देवताहरू पनि सोमपान गर्ने विश्वव्यापी पवित्र यज्ञमार्गको वर्णन गर्न यस लोकमा को समर्थ होला ?

सहस्रधा पञ्चदशान्युक्था यावद् द्यावापृथिवी तावदित्तत्।
सहस्रधा महिमानः सहस्रं यावद् ब्रह्म विष्ठितं तावती वाक् ॥८॥
पन्ध्र हजार उक्थरूपी मन्त्र छन्। द्यावापृथिवीजस्तै ती मन्त्र पनि विस्तृत महिमाशाली छन्। हजारौं किसिमको मन्त्रको महान् सामर्थ्य छ। स्तोत्र अनन्त भएझैं वाणीको महिमा पनि अपार छ।

कश्छन्दसां योगमा वेद धीरः को धिष्ण्यां प्रति वाचं पपाद।
कमृत्विजामष्टमं शूरमाहुर्हरी इन्द्रस्य नि चिकाय कः स्विद् ॥९॥
सम्पूर्ण छन्दविद्या राम्रोसित जानेको ज्ञानी को होला ? मूल वाक्यको रचना कुन ज्ञानीले बुझेको छ ? सात होताभन्दा माथि आठौं ब्रह्मा हुन सक्ने प्रमुख पुरुष को होला ? इन्द्रदेवका दुई घोडालाई कसले राम्ररी देखेको र बुझेको होला ?

भूम्या अन्तं पर्येके चरन्ति रथस्य धूर्षु युक्तासो अस्थुः।
श्रमस्य दायं वि भजन्त्येभ्यो यदा यमो भवति हर्म्ये हितः ॥१०॥
कतिपय अश्व भूलोकको सीमाबाट अन्तरिक्षसम्म विचरण गर्दछन् भने कतिपय रथका धुरामा नै जोतिएका हुन्छन्। यिनको थकाइ मेटाउन सारथी सूर्यका रथमा विराजमान भएपछि देवताहरू आहारा दिन्छन्।

[सूक्त - ११५]

ऋषि - उपस्तुत वार्ष्टिहव्य। देवता - अग्नि। छन्द - जगती त्रिष्टुप् शक्वरी।

चित्र इच्छिशोस्तरुणस्य वक्षथो न यो मातरावप्येति धातवे।
अनूधा यदि जीजनदधा च नु ववक्ष सद्यो महि दूत्यं चरन् ॥१॥
शिशु अवस्थाबाट सोझै युवक हुने गरेका अग्निदेवको क्रम ज्यादै अद्भुत छ। उनी उत्पन्न भएपछि आफ्ना स्तनविनाका दुवै मातासँग दुध खान गइरहँदैनन्, बरु त गतिलो दूतको भूमिका निर्वाह गर्न थालेर सोझै देवताकहाँ हवि पुऱ्याउँछन्।

अग्निर्ह नाम धायि दन्नपस्तमः सं यो वना युवते भस्मना दता।
अभिप्रमुरा जुह्वा स्वध्वर इनो न प्रोथमानो यवसे वृषा ॥२॥
असल कर्म गर्ने र दाताका रूपमा रहेकालाई यजमानले अग्नि भन्ने नाम तोकिदिए। उनै अग्नि ज्वालारूपी दाँतले गजबसित वन खान्छन्। बलिया साँढेले घाँस खाएझैं उनी जुहु नामका राम्रो पात्रमा समर्पित हवि खान्छन्।

तं वो विं न द्रुषदं देवमन्धस इन्दुं प्रोथन्तं प्रवपन्तमर्णवम्।
आसा वह्निं न शोचिषा विरप्शिनं महिव्रतं न सरजन्तमध्वनः ॥३॥
हे स्तोता हो ! रुखमा आश्रय पाउने चरोझैं अरणीका आश्रित, तेजस्वी, अन्नदाता, ध्वनि निकाल्दै वन डढाउने, जलयुक्त, मुखले हवि बोक्ने, तेजले महान् बनेका, महत्त्वपूर्ण कर्मको निर्वाह गर्ने र सूर्यझैं मार्ग देखाउने अग्निदेवलाई प्रार्थना गर।

वि यस्य ते ज्रयसानस्याजर धक्षोर्न वाताः परि सन्त्यच्युताः।
आ रण्वासो युयुधयो न सत्वनं त्रितं नशन्त प्र शिषन्त इष्टये ॥४॥
हे अविनाशी अग्निदेव ! डढाउने काम गर्दा तिमीलाई चारै तिरबाट वायुले सञ्चालन गराउँछन्। ऋत्विक्हरू गतिशील योद्धाझैं यज्ञ गर्दै तिम्रो स्तुतिगान गर्दछन् र तिमीलाई छेकेर उपस्थित हुन्छन्। तीनै कालका यज्ञमा, तीनै लोकमा व्याप्त, बलसम्पन्न तिमीलाई उनीहरूले फेला पार्दछन्।

स इदग्निः कण्वतमः कण्वसखार्यः परस्यान्तरस्य तरुषः।
अग्निः पातु गृणतो अग्निः सूरीनग्निर्ददातु तेषमवो नः ॥५॥

अग्निदेव सर्वाधिक ध्वनि गर्दै र टाढा वा नजिकका शत्रु नाश गर्दछन्। शब्द उच्चारण गर्दै पाठ गर्नेहरूका लागि अग्निदेव मित्रजस्तै संरक्षक हुन्। अग्निदेवले हामीलाई अन्न र सुरक्षा प्रदान गरुन्।

वाजिन्तमाय सह्यसे सुपित्र्य तृषु च्यवानो अनु जातवेदसे।
अनुद्रे चिद्यो धृषता वरं सते महिन्तमाय धन्वनेदविष्यते ॥६॥

श्रेष्ठ पितृभावयुक्त, प्रचुर अन्न प्रदाता, विपुल सामर्थ्ययुक्त, सर्वोत्तम ज्ञाता हे अग्नि ! तिम्रो स्तुति गर्नका लागि हामी शीघ्रतापूर्वक तत्पर भएका छौं। सङ्कटकालका स्थितिमा महापराक्रमी सामर्थ्यले धनुषबाण लिएर तिमी संरक्षण प्रदान गर्दछौ। यस्ता पूजनीय, सर्वश्रेष्ठ दाता अग्निदेवलाई हामी असल यज्ञ सामग्री समर्पित गर्दछौं।

एवाग्निर्मर्तैः सह सूरिभिर्वसु ष्टवे सहसः सूनरो नृभिः।
मित्रासो न ये सुधिता ऋतायवो द्यावो न द्युम्नैरभि सन्ति मानुषान् ॥७॥

यज्ञ कर्ममा संलग्न, ज्ञानी मानिस अग्निदेवलाई शक्तिका पुत्र र ऐश्वर्यशाली भनेर पुकार्दछन्। यज्ञीय सत्कर्म निर्वाह गर्ने मित्रजस्ता अग्निदेवका नजिकै हामी सन्तुष्टि प्राप्त गर्दछौं। उनले आफ्ना दिव्यतायुक्त यशस्वी तेजले शत्रुलाई पराजित गर्दछन्।

ऊर्जो नपात्सहसावन्निति त्वोपस्तुतस्य वन्दते वृषा वाक्।
त्वां स्तोषाम त्वया सुवीरा द्राघीय आयुः प्रतरं दधानाः ॥८॥

हे बलका पुत्र, सामर्थ्यवान् अग्निदेव ! उपस्तुत ऋषि तिम्रा लागि तेजस्वी स्तोत्र गाउँछन्; हामी तिम्रो प्रार्थना गर्दछौं। तिम्रा कृपादृष्टिले सुसन्तति र दीर्घायु प्राप्त गरौं।

इति त्वाग्ने वृष्टिहव्यस्य पुत्रा उपस्तुतास ऋषयोऽवोचन्। तांश्च पाहि
गृणतश्च सूरीन्वषड्वषडित्यूर्ध्वासो अनक्षन्नमो नम इत्यूर्ध्वासो अनक्षन ॥९॥

हे अग्निदेव ! वृष्टिहव्य नामका ऋषिका पुत्र उपस्तुत आदि द्रष्टा ऋषिले तिमीलाई स्तुति र अर्चना गरे। तिमी ती र स्तोता विद्वान्‌लाई सुरक्षा गर। वषट्, वषट् गर्दै मन्त्रको उच्चारण गरेर हात माथि उचाल्दै हवि समर्पित गर्ने र नमः, नमः भन्दै स्तुति गर्ने स्तोतालाई तिमी संरक्षण प्रदान गर।

[सूक्त – ११६]

**ऋषि** – अग्नियुत स्थौर अथवा अग्नियूप स्थौर। **देवता** – इन्द्र। **छन्द** – त्रिष्टुप्।

पिबा सोमं महत इन्द्रियाया पिबा वृत्राय हन्तवे शविष्ठ।
पिब राये शवसे हूयमानः पिब मध्वस्तृपदिन्द्रा वृषस्व ॥१॥

बलशालीहरूमा अग्रणी हे इन्द्रदेव ! प्रचुर सामर्थ्य प्राप्त गर्न र वृत्रासुर वध गर्नका लागि सोमपान गर। तिमी स्तुति गरिंदा हामीलाई अन्न र ऐश्वर्य प्रदान गर्न सोमपान गर। तिमी मधुजस्तो सोमरस पान गरेर सन्तुष्ट हुँदै हाम्रो कामना पूरा गराऊ।

अस्य पिब क्षुमतः प्रस्थितस्येन्द्र सोमस्य वरमा सुतस्य।
स्वस्तिदा मनसा मादयस्वार्वाचीनो रेवते सौभगाय ॥२॥

हे इन्द्रदेव ! तिमी राम्ररी प्रस्तुत, पेलिएको हविरूपी सोमरसको उचित भाग पान गर। कल्याणकारी मनले तिमी आनन्दित र ऐश्वर्य तथा सौभाग्य प्रदान गर्न अघि आऊ।

ममत्तु त्वा दिव्यः सोम इन्द्र ममत्तु यः सूयते पार्थिवेषु।
ममत्तु येन वरिवश्चकर्थ ममत्तु येन निरिणासि शत्रून् ॥३॥

हे इन्द्रदेव ! तिमीलाई दिव्य सोमले प्रोत्साहित गरोस्। पृथ्वीमा मानिसले सम्पन्न गर्ने यज्ञमा पेलेका सोमरसले तिमीलाई प्रशंसित गरोस्। जेबाट तिमी श्रेष्ठ ऐश्वर्य धारण गर्दछौ, त्यसले पनि आनन्दित गराओस्। जेबाट शत्रु नाश हुन्छन्, त्यस सोमरसले पनि तिमीलाई हर्षित गरोस्।

आ द्विबर्हा अमिनोयात्विन्द्रो वृषा हरिभ्यां परिषिक्तमन्धः।
गव्या सुतस्य प्रभृतस्य मध्वः सत्रा खेदामरुशहा वृषस्व ॥४॥

दुवै लोकमा व्याप्त रहेका, सर्वत्र गमन गर्ने र कामना पूरा गराउने इन्द्र चारै तिरबाट अभिषिञ्चित आहारका लागि दुवै अश्वमा यहाँ आउन्। हे इन्द्रदेव ! तिम्रा लागि मधुर सोम, वृषभचर्ममाथि

शोधन गरेर भाँडाभरि राखिएको छ। त्यो सोमरस पान गरेर साँढेले जस्तै यज्ञका शत्रुको विनाश गर।

**नि तिग्मानि भ्राशयन्भ्राश्यान्व स्थिरा तनुहि यातुजूनाम्।**
**उग्राय ते सहो बलं ददामि प्रतीत्या शत्रून्विगदेषु वृश्च ॥५॥**

हे इन्द्रदेव ! तिमी धारिलो शस्त्र देखाउँदै राक्षसको बलियो शरीर भुइँमा पसारा पार। तिमीजस्ता पराक्रमीलाई हामी उत्साहवर्द्धक सोमरस प्रदान गर्दछौं। सोमपानबाट प्राप्त सामर्थ्यले युद्धमा शत्रुमाथि प्रहार गरेर विनाश गर।

**व्य१र्य इन्द्र तनुहि श्रवांस्योजः स्थिरेव धन्वनोऽभिमातीः।**
**अस्मद्र्यग्वावृधानः सहोभिरनिभृष्टस्तन्वं वावृधस्व ॥६॥**

हे समर्थ इन्द्रदेव ! हामीलाई अन्नधन प्रदान गर। अहङ्कारी दुष्ट शत्रुमाथि आफ्ना असाधारण पराक्रम र धनुषबाण चलाऊ। अनुकूल भएर हामीलाई संवर्द्धित गर। शत्रुबाट पराजित नभएर आफ्नो सामर्थ्यले शरीर वृद्धि गर।

**इदं हविर्मघवन्तुभ्यं रातं प्रति सम्राडहृणानो गृभाय।**
**तुभ्यं सुतो मघवन्तुभ्यं पक्वो३द्धीन्द्र पिब च प्रस्थितस्य ॥७॥**

हे वैभवशाली इन्द्रदेव ! यो यज्ञीय सामग्री हामी तिम्रै लागि समर्पित गर्दछौं। हे सम्राट् इन्द्रदेव ! क्रोधरहित भएर तिमी ग्रहण गर। हे धनका अधिपति इन्द्रदेव ! तिम्रा लागि नै सोम पेल्ने काम गरिएको हो। तिम्रा लागि नै पुरोडाश आदि खाद्यपरिकार पकाइएको छ। स्नेहपूर्वक प्रस्तुत गरिएको खाद्यपदार्थ खाएर मधुर सोमरस पान गर।

**अद्धीदिन्द्र प्रस्थितेमा हवींषि चनो दधिष्व पचतोत सोमम्।**
**प्रयस्वन्तः प्रति हर्यामसि त्वा सत्याः सन्तु यजमानस्य कामाः ॥८॥**

हे इन्द्रदेव ! यी यज्ञीय पदार्थ तिमीलाई नै चढाएका छौं। प्रस्तुत गरिएका खाद्यपदार्थ र खाद्यसामग्री सेवन गर। हामी अन्न आदि प्रस्तुत गर्दै तिमीलाई आमन्त्रित गर्दछौं। तिमीद्वारा यज्ञकर्ता यजमानको मनको रहर पूरा होस्।

**प्रेन्द्राग्निभ्यां सुवचस्यामियर्मि सिन्धाविव प्रेरयं नावमर्कैः।**
**अयाइव परि चरन्ति देवा ये अस्मभ्यं धनदा उद्भिदश्च ॥९॥**

इन्द्रदेव र अग्निदेवका लागि श्रेष्ठ स्तुति हामी उत्तम रीतिले समर्पित गर्दछौं। नदीमा डुंगा पठाएझैं पवित्र पूजनीय मन्त्रले हामी उनलाई प्रोत्साहित गर्दछौं। हामी देवताको सेवाअर्चना गर्दछौं। उनी हाम्रा लागि धनदाता र शत्रुका संहारकर्ता हुन्।

## [सूक्त - ११७]

ऋषि - भिक्षु आङ्गिरस। देवता - धनअन्न दान प्रशंसा। छन्द - त्रिष्टुप् जगती।

**न वा उ देवाः क्षुधमिद्वधं ददुरुताशितमुप गच्छन्ति मृत्यवः।**
**उतो रयिः पृणतो नोप दस्यत्युतापृणन्मर्डितारं न विन्दते ॥१॥**

देवताले रचना गरेको भोकतिर्खा दुःखदायी छ। अन्न खानेले पनि मृत्युबाट मुक्ति पाउन सक्दैनन्। अर्काका लागि दान गरेको धन कहिल्यै नाश हुँदैन। अर्काका लागि दान नगर्नेलाई कसैले सुखी बनाउन सक्दैन।

**य आध्राय चकमानाय पित्वोऽन्नवान्त्सन्रफितायोपजग्मुषे।**
**स्थिरं मनः कृणुते सेवते पुरोतो चित्स मर्डितारं न विन्दते ॥२॥**

भोकले आत्तिएका मानिस उपस्थित भएर अन्नको भिक्षा मागेका बेला अन्नवान् भईकन पनि निष्ठुर बनेर याचकका अगाडि नै भोजन गर्ने सङ्कीर्ण वृत्तिका मानिसलाई केही पनि सुख दिन सक्दैन।

**स इद्भोजो यो गृहवे ददात्यन्नकामाय चरते कृशाय।**
**अरमस्मै भवति यामहूता उतापरीषु कृणुते सखायम् ॥३॥**

अन्नका अभिलाषाले कुनै गरिब व्यक्तिले मागेका बेला अन्नदान गर्ने नै साँच्चो अर्थमा दाता हुन्। उनलाई सम्पूर्ण यज्ञको फल प्राप्त हुन्छ र शत्रुका बीचमा पनि मित्रको भावना प्राप्त हुन्छ।

न स सखा यो न ददाति सख्ये सचाभुवे सचमानाय पित्वः।
अपास्मात्प्रेयान्न तदोको अस्ति पृणन्तमन्यमरणं चिदिच्छेत् ॥४॥

आफ्ना साथी अगाडि आउँदा मित्र भएर पनि कसैले अन्न दान गरेन भने त्यस्ता कृपण माथिको परित्याग गरेर पर जानु नै उचित हुन्छ। उसको घर निवास गर्न योग्य हुँदैन। यस्ता बेलामा कुनै श्रेष्ठ स्वामीका शरणमा जानु नै श्रेयस्कर हुन्छ।

पृणीयादिन्नाधमानाय तव्यान्द्राघीयंसमनु पश्येत पन्थाम्।
ओ हि वर्तन्ते रथ्येव चक्रान्यमन्यमुप तिष्ठन्त रायः ॥५॥

माग्नका लागि आएका मानिसलाई निश्चय पनि समर्थ मानिसले धन दिएर सन्तुष्ट गर्नुपर्दछ। यस्ता दातालाई स्वर्गीय सुमार्ग प्राप्त हुन्छ। माथि र तल गरी घुम्ने रथको पाङ्ग्रोजस्तै धनसम्पत्ति कहिल्यै पनि स्थिर हुँदैन, कहिले एउटा त कहिले अर्काकोमा आउने र जाने गर्दछ।

मोघमन्नं विन्दते अप्रचेताः सत्यं ब्रवीमि वध इत्स तस्य।
नार्यमणं पुष्यति नो सखायं केवलाघो भवति केवलादी ॥६॥

मनको उदारताविनाको किरन्टोकीको अन्नधन लिनु पनि निरर्थक हुन्छ। त्यो अन्न मृत्युझैं विषालु हुन्छ भन्ने कुरो साँच्चो हो। देवतालाई हविष्यान्न अर्पित नगरी र बन्धुबान्धवलाई नदिई आफूले मात्रै खानेले केवल पापको गाँस खाएको हुन्छ।

कृषिन्नित्फाल आशितं कृणोति यन्नध्वानमप वृङ्क्ते चरित्रैः।
वदन्ब्रह्मावदतो वनीयान्पृणन्नापिरपृणन्तमभि ष्यात् ॥७॥

खेतीको काम गर्दा हलाले गहिरो गरी भूमि जोत्ने किसानले अन्न उत्पादन गर्दछ। उसैले आफ्नो मार्ग हिँडेर आफ्ना कर्मले स्वामीका लागि अन्न प्राप्त गर्दछ। वेद जान्ने मानिस अज्ञानी पुरुषभन्दा उत्तम भएझैं दानी मानिस दानरहितभन्दा सधैं असल हुन्छ।

एकपाद्भूयो द्विपदो वि चक्रमे द्विपात्त्रिपादमभ्येति पश्चात्।
चतुष्पादेति द्विपदामभिस्वरे संपश्यन्पङ्क्तीरुपतिष्ठमानः ॥८॥

धनसम्पदाको एक भाग हुनेले दुई भाग खोज्दछ। दुई भाग हुने तीन भाग हुने धनीसित जान्छ। तीन भाग भएको चार भाग हुनेसँग र चार भाग हुने त्यसभन्दा बढी सम्पत्ति हुनेकहाँ जान्छन्। यसै किसिमले धनसम्पत्तिको शृङ्खला बनेको छ। थोरै धन हुनेले आफूभन्दा धेरै हुने नै बन्न खोजिरहेको हुन्छ।

समौ चिद्धस्तौ न समं विविष्टः सम्मातरा चित्र समं दुहाते।
यमयोश्चिन्न समा वीर्याणि ज्ञाती चित्सन्तौ न समं पृणीतः ॥९॥

हामीसित भएका दुवै हात एकै किसिमका भए पनि धारण गर्ने क्षमताका हिसाबले एकै नासका हुँदैनन्। एकै आमाबाट जन्मिएका गाईले पनि उत्तिकै दुध दिँदैनन्। जुम्ल्याहा दाजुभाइ पनि बलका हिसाबले उत्तिकै हुँदैनन्। एउटै कुलका सन्तान भए पनि दुई भाइमा दानको भावना उस्तै किसिमको हुँदैन।

[सूक्त - ११८]

ऋषि – उरुक्षय आमहीयव। देवता – रक्षोहा अग्नि। छन्द – गायत्री।

अग्ने हंसि न्यत्रिणं दीद्यन्मर्त्येष्वा। स्वे क्षये शुचिव्रत ॥१॥

हे व्रतशील अग्निदेव ! तिमी मानिस याजकका बीचमा आफ्ना तोकिएका ठाउँमा प्रदीप्त भएर अन्धकाररूपी शत्रु विनाश गर।

उत्तिष्ठसि स्वाहुतो घृतानि प्रति मोदसे। यत्त्वा स्रुचः समस्थिरन् ॥२॥

स्रुक नामको यज्ञीय घिउको पात्र तिम्रा नजिकै ल्याएका छौं। हे अग्निदेव ! तिमी उत्तम विधिले समर्पित आहुति पाएर प्रज्वलित हुँदै माथ्तिर उठ। यो घिउको आहुति तिमीलाई नै समर्पित गरिएको छ।

स आहुतो वि रोचतेऽग्निरीळेन्यो गिरा। स्रुचा प्रतीकमज्यते ॥३॥

आदरसहित आह्वान गरिएका र स्तुतिमन्त्रले स्तुत्य अग्नि प्रदीप्त भएर प्रकट हुन्छन्। सम्पूर्ण देवताभन्दा पहिले उनलाई स्रुक नामका पात्रले घिउसहित आहुति अर्पित गर्छौं।

**घृतेनाग्निः समज्यते मधुप्रतीक आहुतः। रोचमानो विभावसुः॥४॥**
अग्निदेव घिउ आदि हविष्यान्नले संयुक्त हुँदा स्तुति र आहुतिले तृप्त भएर प्रचुर मात्रामा प्रकाशले प्रदीप्त हुन्छन्।

**जरमाणः समिध्यसे देवेभ्यो हव्यवाहन। तं त्वा हवन्त मर्त्याः॥५॥**
हे अग्निदेव ! तिमी देवताका लागि हविवाहक हौ। स्तोत्रले स्तुति गरिँदा तिमी प्रदीप्त हुन्छौ। सबै याजकले तिमीलाई भावनापूर्वक आह्वान गर्दछन्।

**तं मर्ता अमर्त्यं घृतेनाग्निं सपर्यत। अदाभ्यं गृहपतिम्॥६॥**
हे मरणशील मानिस हो ! अग्निदेव अविनाशी, पराक्रमी र गृहपति हुन्। घिउ आदिले उनलाई अर्चना गर।

**अदाभ्येन शोचिषाग्ने रक्षस्त्वं दह। गोपा ऋतस्य दीदिहि॥७॥**
हे अग्निदेव ! तिमी आफ्ना प्रखर तेजले राक्षसी प्रवृत्ति दहन गर। यज्ञको संरक्षक बनेर तिमी दीप्तिमान् होऊ।

**स त्वमग्ने प्रतीकेन प्रत्योष यातुधान्य। उरुक्षयेषु दीद्यत्॥८॥**
हे अग्निदेव ! तिमी आफ्ना स्वाभाविक तेजले प्रदीप्त भएर राक्षसी शक्ति भस्मीभूत गराऊ। तिमी निर्धारित स्थानमा रहेर तेज धारण गर।

**तं त्वा गीर्भिरुरुक्षया हव्यवाहं समीधिरे। यजिष्ठं मानुषे जने॥९॥**
हे अग्निदेव ! तिमी हवि वहनकर्ता, मानिसमा सर्वोत्तम यज्ञकर्ता र विलक्षण निवासले युक्त छौ। तिमीलाई स्तोत्रले प्रदीप्त गर्दछौँ।

## [सूक्त - ११९]

**ऋषि** - लब ऐन्द्र। **देवता** - लब ऐन्द्र। **छन्द** - गायत्री।

**इति वा इति मे मनो गामश्वं सनुयामिति। कुवित्सोमस्यापामिति॥१॥**
म इन्द्र हुँ। पोषणका रूपमा गाई र बलका रूपमा अश्व आदि दान गर्ने मेरा मनको इच्छा छ। किनभने मैले कैयौँ पटक सोमरस पान गरिसकेको छु।

**प्र वाताइव दोधात उन्मा पीता अयंसत। कुवित्सोमस्यापामिति॥२॥**
अत्यन्त वेगवान् वायु वृक्षलाई कम्पायमान गराउँदै माथि उठेभैँ पान गरेका सोमरसले कँपाउँछ र प्रोत्साहित गर्दछ। मैले कैयौँ पटक सोमपान गरेको छु।

**उन्मा पीता अयंसत रथमश्वा इवाशवः। कुवित्सोमस्यापामिति॥३॥**
तीव्र गतिका घोडाले रथलाई माथि उचालेर लगेभैँ पान गरिएका सोमरसले मलाई उत्कर्ष प्रदान गर्दछ। मैले कैयौँ पटक सोमपान गरेको छु।

**उप मा मतिरस्थित वाश्रा पुत्रमिव प्रियम्। कुवित्सोमस्यापामिति॥४॥**
बाँ गरेर कराउने गाई बाछाका नजिक आएभैँ पान गराउने स्तोताहरू मतिर आउँछन्। मैले कैयौँ पटक सोमपान गरेको छु।

**अहं तष्टेव वन्धुरं पर्यचामि हृदा मतिम्। कुवित्सोमस्यापामिति॥५॥**
त्वष्टादेवले रथको माथिल्लो भाग बनाएभैँ स्तोताका हृदयमा म श्रद्धा उत्पन्न गराउँछु।

**नहि मे अक्षिपच्चनाच्छान्त्सुः पञ्च कृष्टयः। कुवित्सोमस्यापामिति॥६॥**
पाँच किसिमका जनताको सृष्टि मेरा दृष्टिबाट एकै छिन पनि छलिन सक्दैन। मैले कैयौँ पटक सोमपान गरेको छु।

**नहि मे रोदसी उभे अन्यं पक्षं चन प्रति। कुवित्सोमस्यापामिति॥७॥**
द्यावापृथिवी दुई भए पनि मेरो एकातर्फ जति पनि हुँदैनन्। मैले कैयौँ पटक सोमपान गरेको छु।

**अभि द्यां महिना भुवमभीऽमां पृथिवीं महीम्। कुवित्सोमस्यापामिति॥८॥**
मैले आफ्ना महत्ताले द्युलोक र विस्तृत पृथ्वीलाई आफ्नै वशमा राखेको छु। मैले कैयौँ पटक सोमपान गरेको छु।

**हन्ताहं पृथिवीमिमां नि दधानीह वेह वा। कुवित्सोमस्यापामिति॥९॥**
मभित्र यति धेरै सामर्थ्य छ कि यस पृथ्वीलाई जतासुकै अर्को ठाउँमा सारिदिन सक्छु। मैले कैयौँ पटक सोमपान गरेको छु।

ओषमित्पृथिवीमहं जङ्घनानीह वेह वा। कुवित्सोमस्यापामिति ॥१०॥
म यो धर्ती अथवा आफ्ना तेजले तताउने सूर्यलाई यहाँ अथवा द्युलोक जहाँ मन लाग्छ, त्यहीं विनाश गर्न सक्दछु। मैले कैयौं पटक सोमपान गरेको छु।

दिवि मे अन्य पक्षोऽधो अन्यमचीकृषम्। कुवित्सोमस्यापामिति ॥११॥
मेरो एक भाग द्युलोकमा रहेको छ भने अर्को भाग पृथ्वीका तल्ला भागमा छ। मैले कैयौं पटक सोमपान गरेको छु।

अहमस्मि महामहोऽभिनभ्यमुदीषितः। कुवित्सोमस्यापामिति ॥१२॥
अन्तरिक्षमा उदय हुने सूर्यजस्तै म इन्द्र पनि महान्‌भन्दा झन महान् छु। मैले कैयौं पटक सोमपान गरेको छु।

गृहो याम्यरङ्कृतो देवेभ्यो हव्यवाहनः। कुवित्सोमस्यापामिति ॥१३॥
देवताका लागि हवि वहन गर्ने म यजमानद्वारा स्तुत्य भएर हवि ग्रहण गर्नका लागि जाने गर्दछु। मैले कैयौं पटक सोमपान गरेको छु।

[सूक्त - १२०]

**ऋषि** - बृहद्दिव आथर्वण। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप।

तदिदास भुवनेषु ज्येष्ठं यतो जज्ञ उग्रस्त्वेषनृम्णः।
सद्यो जज्ञानो नि रिणाति शत्रूननु यं विश्वे मदन्त्यूमाः ॥१॥
संसारको कारणका रूपमा रहेको ब्रह्म स्वयं नै सबै लोकमा प्रकाशका रूपमा व्याप्त छन्। उनीबाट प्रचण्ड तेजस्वी बलले सम्पन्न सूर्य प्रकट भए। तिनको उदय हुनासाथ अन्धकाररूपी शत्रु विनाश हुन्छ। त्यो देखेपछि सबै प्राणी हर्षित हुने गर्दछन्।

वावृधानः शवसा भूर्योजाः शत्रुर्दासाय भियसं दधाति।
अव्यनच्च व्यनच्च सस्नि सं ते नवन्त प्रभृता मदेषु ॥२॥
आफ्ना सामर्थ्यले बढ्दै आएका, अनन्त शक्तिले सम्पन्न, दुष्टका शत्रु इन्द्रदेवले शत्रुका मनमा डर उत्पन्न गराउँछन्। सबै चर र अचर प्राणीलाई उनैले सञ्चालन गर्दछन्। हामी एकजुट भएर उनै इन्द्रदेवलाई स्तुति गर्दछौं र आफूभित्र हामी रमाउँछौं।

त्वे क्रतुमपि वृञ्जन्ति विश्वे द्विर्यदेते त्रिर्भवन्त्यूमाः।
स्वादोः स्वादीयः स्वादुना सृजा समदः सु मधु मधुनाभि योधी ॥३॥
हे इन्द्रदेव ! सबै यजमानले तिम्रै लागि अनुष्ठान गर्दछन्। बिहा गरेका यजमान एक या दुई सन्तान भएर दुईपछि तीन भएपछि प्रिय सन्तानलाई धन र गुणले सम्पन्न गराऊ। अनि ती सन्तानबाट नातिपनातिको मधुर स्नेहले सम्पन्न गराऊ।

इति चिद्धि त्वा धना जयन्तं मदेमदे अनुमदन्ति विप्राः।
ओजीयो धृष्णो स्थिरमा तनुष्व मा त्वा दभन्यातुधाना दुरेवाः ॥४॥
हे इन्द्रदेव ! सोमपान गरेर आनन्दित हुँदै धनसम्पदामाथि विजय प्राप्त गर्दा ज्ञानी स्तोताले तिमीलाई नै स्तुति गर्दछन्। हे अपराजेय इन्द्रदेव ! हामीलाई तिमी तेजस्विता प्रदान गर। दुस्साहसी असुरले कहिल्यै पनि तिमीलाई पराजित गर्न नसकोस्।

त्वया वयं शाशद्महे रणेषु प्रपश्यन्तो युधेन्यानि भूरि।
चोदयामि त आयुधा वचोभिः सं ते शिशामि ब्रह्मणा वयांसि ॥५॥
हे इन्द्रदेव ! तिम्रै सहयोगले हामी रणभूमिमा दुष्ट शत्रुमाथि विजय प्राप्त गर्दछौं। युद्धको इच्छाले प्रेरित अनेकौं शत्रु भेटिन्छन्। तिम्रा वज्र आदि आयुधलाई हामी स्तोत्रले प्रोत्साहित गर्दछौं। स्तुति मन्त्रले हामी तिम्रो तेजस्विता तीक्ष्ण गराउँछौं।

स्तुषेय्यं पुरुवर्पसमृभ्वमिनतममाप्त्यमाप्त्यानाम्।
आ दर्षते शवसा सप्त दानून्प्र साक्षते प्रतिमानानि भूरि ॥६॥
स्तुत्य, विभिन्न स्वरूप भएका, दीप्तिमान्, सर्वेश्वर र सर्वश्रेष्ठ आत्मीय इन्द्रदेवलाई हामी स्तुति गर्दछौं। उनले आफ्ना सामर्थ्यले वृत्र, नमुची, कुयव आदि सात राक्षस विनाश गरे र असुरलाई पराजित गराएका थिए।

**नि तद्दधिषेऽवरं परं च यस्मिन्नाविथावसा दुरोणे।**
**आ मातरा स्थापयसे जिगत्नू अत इनोषि कर्वरा पुरूणि ॥७॥**

हे इन्द्रदेव ! तिमी यजमानका घरमा हविरूप अन्नले सन्तुष्ट हुन्छौ। उसलाई दिव्य र भौतिक सम्पदा प्रदान गर्दछौ। सम्पूर्ण प्राणीका निर्माता, गतिशील द्युलोक र पृथ्वीलाई तिमीले नै स्थिर गराएका हौ। त्यस बेलामा तिमीले अनेकौं कार्य निर्वाह गर्नुपर्दछ।

**इमा ब्रह्म बृहद्दिवो विवक्तीन्द्राय शूषमग्रियः स्वर्षाः।**
**महोगोत्रस्य क्षयति स्वराजो दुरश्च विश्वा अवृणोदप स्वाः ॥८॥**

ऋषिहरूमा श्रेष्ठ र स्वर्गलोकका आकाङ्क्षी बृहद्दिव ऋषिले इन्द्रदेवलाई सुख प्रदान गर्न वैदिक मन्त्रको पाठ गरे। तेजस्वी, दीप्तिमान् इन्द्रदेवल विशाल पर्वत हटाउँछन् र शत्रुका सहरको ढोका उघार्दछन्।

**एवा महान्बृहद्दिवो अथर्वावोचत्स्वां तन्वमिन्द्रमेव।**
**स्वसारो मातरिभ्वरीररिप्रा हिन्वन्ति च शवसा वर्धयन्ति च ॥९॥**

अथर्वा ऋषिका पुत्र महाप्राज्ञ बृहद्दिवले इन्द्रदेवका लागि आफ्नो विशाल स्तुति उच्चारण गरे। माताजस्ती भूमिमा उत्पन्न भएका नदी आपसमा दिदीबहिनीझैं स्नेहका साथ जल प्रवाहित गर्दछन् र अन्नबलले लोकको कल्याण गर्दछन्।

[सूक्त - १२१]

ऋषि - हिरण्यगर्भ प्राजापत्य। देवता - को (प्रजापति)। छन्द - त्रिष्टुप्।

**हिरण्यगर्भः समवर्तताग्रे भूतस्य जातः पतिरेक आसीत्।**
**स दाधार पृथिवीं द्यामुतेमां कस्मै देवाय हविषा विधेम ॥१॥**

उहिले नै हिरण्यगर्भका नाममा, सबै खालका उत्पादनशील पदार्थका स्वामी उनै एक मात्र परमात्मा उचित रूपमा स्थापित भएर पृथ्वी र द्युलोक धारण गरे। उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

**य आत्मदा बलदा यस्य विश्व उपासते प्रशिषं यस्य देवाः।**
**यस्य छायामृतं यस्य मृत्युः कस्मै देवाय हविषा विधेम ॥२॥**

आत्मज्ञानको प्रेरणा प्रदान गर्ने परमात्माको आज्ञा सम्पूर्ण मानिस र देवसमुदायले पालन गर्दछन्, उनको छत्रछाया अमृतमय छ र मृत्यु उनैका अधीनमा छ, उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

**यः प्राणतो निमिषतो महित्वैक इद्राजा जगतो बभूव।**
**य ईशे अस्य द्विपदश्चतुष्पदः कस्मै देवाय हविषा विधेम ॥३॥**

आफ्ना महान् सामर्थ्यले प्राणयुक्त र गतिशील हुँदै देखिने प्राणीसमुदायका एक मात्र अधिपति परमात्मा दुईखुट्टे वा चारखुट्टेका स्वामी हुन्। उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

**यस्येमे हिमवन्तो महित्वा यस्य समुद्रं रसया सहाहुः।**
**यस्येमाः प्रदिशो यस्य बाहू कस्मै देवाय हविषा विधेम ॥४॥**

कसका महिमाले हिउँले ढाकिएका पहाड प्रकट भए, कसका महान् सामर्थ्यलाई जलले भरिएका नदी, गतिशील पृथ्वी, समुद्र र आकाश आदिले व्यक्त गर्दछन्, सबै मुख्य दिशा पाखुराजस्ता भएर कसको सामर्थ्यलाई सङ्केत गर्दछन् र उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

**येन द्यौरुग्रा पृथिवी च दृळ्हा येन स्वः स्तभितं येन नाकः।**
**यो अन्तरिक्षे रजसो विमानः कस्मै देवाय हविषा विधेम ॥५॥**

यी उच्च अन्तरिक्ष र पृथ्वीलाई आआफ्ना तोकिएका ठाउँमा कुशलतापूर्वक स्थापित गर्ने, स्वर्गलोक अड्याउने, सूर्यलाई अन्तरिक्षमा केन्द्रित गर्ने, अन्तरिक्षमा रज र तेजका अनन्त पिण्ड स्थापना गर्ने को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

यं क्रन्दसी अवसा तस्तभाने अभ्यैक्षेतां मनसा रेजमाने।
यत्राधि सूर उदितो विभाति कस्मै देवाय हविषा विधेम ॥६॥

द्यावापृथिवी शब्दायमान भएर, मानिसलाई संरक्षण प्रदान गर्न स्थिर र प्रकाशित हुँदै महिमाशाली रूपमा जसलाई हेर्दछन्, जसका आश्रयले सूर्यदेव उदाएर अन्तरिक्षमा प्रकाशित हुन्छन्, उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

आपो ह यद् बृहतीर्विश्वमायन्गर्भं दधाना जनयन्तीरग्निम्।
ततो देवानां समवर्ततासुरेकः कस्मै देवाय हविषा विधेम ॥७॥

सृष्टिका प्रारम्भमा अप् वा जलतत्त्वले सम्पूर्ण विश्व ढाकेको थियो। त्यसले गर्भधारण गरेर महान् अग्नि र आकाश आदि उत्पन्न भए। त्यसपछि देवतामध्ये अद्वितीय प्राण उत्पत्ति भयो। उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

यश्चिदापो महिना पर्यपश्यद्दक्षं दधाना जनयन्तीर्यज्ञम्।
यो देवेष्वधि देव एक आसीत्कस्मै देवाय हविषा विधेम ॥८॥

परमेश्वरले जलरूपी मूल क्रियाशील तत्त्वबाट सृष्टि संरचनामा दक्षता धारण गर्ने खालको विराट यज्ञ उत्पन्न हुँदै गरेको देखे। त्यस बेला देवताका उनी एक मात्र देवता रहेका थिए। उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

मा नो हिंसीज्जनिता यः पृथिव्या यो वा दिवं सत्यधर्मा जजान।
यश्चापश्चन्द्रा बृहतीर्जजान कस्मै देवाय हविषा विधेम ॥९॥

सृष्टिका रचयिता, सत्यरूपी धर्मका पालक, जगत् धारण गर्ने र स्वर्गलोकका निर्माता, आह्लादकारी र प्रचुर मात्रामा अप् तत्त्व उत्पादनकर्ताले हामीलाई हिंसित नगरून्। उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं।

प्रजापते न त्वदेतान्यन्यो विश्वा जातानि परि ता बभूव।
यत्कामास्ते जुहुमस्तन्नो अस्तु वयं स्याम पतयो रयीणाम् ॥१०॥

हे प्रजापति ! तिम्रा अतिरिक्त अन्य कसैले वर्तमान, भूत र भविष्यका सबै उत्पन्न पदार्थ व्याप्त गराउन सक्दैन। जुन विभूतिको आकाङ्क्षा गर्दै हामी हविष्यान्न अर्पित गर्दछौं, त्यो प्राप्त होस्। हामी सम्पूर्ण ऐश्वर्यका अधिपति होऔं।

[सूक्त - १२२]

ऋषि - चित्रमहा वासिष्ठ। देवता - अग्नि। छन्द - जगती त्रिष्टुप्।

वसुं न चित्रमहसं गृणीषे वामं शेवमतिथिमद्विषेण्यम्।
स रासते शुरुधो विश्वधायसोऽग्निर्होता गृहपतिः सुवीर्यम् ॥१॥

सूर्यजस्तै अद्भुत, तेजस्वी, रमणीय, अतिथिजस्तै पूजनीय र विद्वेषरहित अग्निदेवलाई हामी अर्चना गर्दछौं। सर्वपोषक दुधले संसार धारण गर्दै दुःख नाश गर्ने अग्निदेवले गाई र श्रेष्ठ बल हामीलाई प्रदान गरून्। उनी देवताका आह्वानकर्ता र गृहपति हुन्।

जुषाणो अग्ने प्रति हर्य मे वचो विश्वानि विद्वान् वयुनानि सुक्रतो।
घृतनिर्णिग्ब्रह्मणे गातुमेरय तव देवा अजनयन्ननु व्रतम् ॥२॥

हे अग्निदेव ! हर्षित भएर हाम्रा स्तोत्रको कामना गर। हे श्रेष्ठ कर्मशील र समस्त लोकका ज्ञाता अग्निदेव ! घिउको आहुति ग्रहण गरेर स्तोतालाई सामगान गर्ने प्रेरणा देऊ। तिम्रो अनुकरण गर्दै देवता यज्ञमा आउँछन् र यजमानलाई यज्ञको फल दिन्छन्।

सप्त धामानि परियन्नमर्त्यो दाशद्दाशुषे सुकृते मामहस्व।
सुवीरेण रयिणाग्ने स्वाभुवा यस्त आनट् समिधा तं जुषस्व ॥३॥

हे अग्निदेव ! पृथ्वी आदि सातै लोकमा व्याप्त, अविनाशी रूप हुनाले तिमी पुरोडाश आदि हवि समर्पित गर्ने दानशील, सत्कर्मशील यजमानका सबै अभीष्ट कामना पूरा गराऊ। समिधा आदि समर्पित गरेर तिमीलाई संवर्द्धित गर्नेलाई वीर सन्तान र श्रेष्ठ विवेकसम्मत सम्पदा प्रदान गर।

यज्ञस्य केतुं प्रथमं पुरोहितं हविष्मन्त ईळते सप्त वाजिनम्।
शृण्वन्तमग्निं घृतपृष्ठमुक्षणं पृणन्तं देवं पृणते सुवीर्यम् ॥४॥

अग्निदेव यज्ञका ध्वजारूप, सर्वश्रेष्ठ, सम्मुख विराजमान, बलिष्ठ, समस्त स्तोत्रको श्रोता,

तेजस्वी, अभिलषित फल प्रदान गर्ने यजमानलाई धन आदिले हर्षित गर्दछन्। सामर्थ्ययुक्त दिव्य गुणले सम्पन्न अग्निदेवलाई हविष्यान्न समर्पित गरेर सात ऋत्विक्‌हरू अर्चना गर्दछन्।

**त्वं दूतः प्रथमो वरेण्यः स हूयमानो अमृताय मत्स्व।**
**त्वां मर्जयन्मरुतो दाशुषो गृहे त्वां स्तोमेभिर्भृगवो वि रुरुचुः ॥५॥**

हे अग्निदेव ! तिमी देवताहरूमा सर्वोत्तम र अग्रणी, पूजनीय दूत हौ। अमरत्व प्राप्त गर्न आह्वान गर्दा हर्षित हुन्छौ। मरुत्‌हरू तिमीलाई सुशोभित गराउँछन्। भृगुका वंशज ऋषिले तिमीलाई यजमानका घरमा स्तोत्रले विशिष्ट रूपमा प्रज्वलित गर्दछन्।

**इषं दुहन्त्सुदुघां विश्वधायसं यज्ञप्रिये यजमानाय सुक्रतो।**
**अग्ने घृतस्नुस्त्रिर्ऋतानि दीद्यद्वर्तिर्यज्ञं परियन्त्सुक्रतूयसे ॥६॥**

हे अद्‌भुत कर्मशील अग्निदेव ! यज्ञीय सत्कर्ममा संलग्न रहने यजमानका लागि तिमी यज्ञस्वरुपिणी यथेष्ट दुध दिने र विश्वलाई पालन गर्ने गाईका रूपमा यज्ञको फल प्रदान गर। तिमी प्रदीप्त भएर तीनै लोक प्रकाशित गर्दछौ। यज्ञस्थलमा सर्वत्र विराजमान भएर तिमी स्वयं नै सत्कर्मरूपी यज्ञ सम्पादित गरिरहेका छौ।

**त्वामिदस्या उषसो व्युष्टिषु दूतं कृण्वाना अयजन्त मानुषाः।**
**त्वां देवा महयाय्याय वावृधुराज्यमग्ने निमृजन्तो अध्वरे ॥७॥**

हे अग्निदेव ! उषा प्रकाशित हुने बेलामा तिमीलाई दूतको रूप मानेर यजमान साधक यज्ञ सम्पादित गर्दछन्। देवताहरू पनि तिमीलाई नै यजनीय मानेर अर्चना गर्दछन् र यज्ञमा घिउको आहुति अर्पण गरेर तिमीलाई नै संवर्द्धित गर्दछन्।

**नि त्वा वसिष्ठा अह्वन्त वाजिनं गृणन्तो अग्ने विदथेषु वेधसः।**
**रायस्पोषं यजमानेषु धारय यूयं पात स्वस्तिभिः सदा नः ॥८॥**

हे अग्निदेव ! यज्ञमा अनुष्ठानकर्ता र स्तोत्रकर्ता वसिष्ठका वंशज ऋषिले तिमीलाई नै अन्नसम्पन्न र बलिष्ठ मानेर आह्वान गर्दछन्। तिमी दानशील यजमानका घरमा ऐश्वर्य स्थापित गर। हामीलाई तिमी कल्याणकारी संसाधनले सधैं संरक्षित गर।

[सूक्त - १२३]

ऋषि - वेन भार्गव। देवता - वेन। छन्द - त्रिष्टुप्।

**अयं वेनश्चोदयत्पृश्निगर्भा ज्योतिर्जरायू रजसो विमाने।**
**इममपां सङ्गमे सूर्यस्य शिशुं न विप्रा मतिभी रिहन्ति ॥१॥**

वेनले ज्योतिका जरायुरूपी गर्भका आवरणमा रहेको तेज विशिष्ट सन्दर्भमा प्रेरित गर्दछन्। जलतत्त्वसँग सूर्यको सम्पर्क हुँदा विप्रहरू शिशुले झैं स्तुति गर्दछन्।

**समुद्रादूर्मिमुदियर्ति वेनो नभोजाः पृष्ठं हर्यतस्य दर्शि।**
**ऋतस्य सानावधि विष्टपि भ्राट् समानं योनिमभ्यनूषत व्राः ॥२॥**

वेनदेव अन्तरिक्षमा व्याप्त लहरलाई प्रेरित गर्दछन्। आकाशमा त्यस कान्तिमान्‌को पृष्ठभूमि स्पष्ट रूपमा प्रकट हुन्छ। ऋतका शिखरमा त्यो प्रकाशित हुन्छ। उसैको जस्तै उत्पत्ति केन्द्रबाट उत्पन्न वेदवाणीले उसै प्रक्रियाको स्तुति गर्दछ।

**समानं पूर्वीरभि वावशानास्तिष्ठन्वत्सस्य मातरः सनीडाः।**
**ऋतस्य सानावधि चक्रमाणा रिहन्ति मध्वो अमृतस्य वाणीः ॥३॥**

पहिले नै वर्णन गरिएका वेन रूपी वत्स उत्पादक शक्तिरूपा मातासित एउटै गुँडमा रहेर ऋतका शिखरमा मधुर अमृत प्रवाह सञ्चालित गर्दछन्। वेदका वाणीले त्यसैको वर्णन गर्दछ।

**जानन्तो रूपमकृपन्त विप्रा मृगस्य घोषं महिषस्य हि ग्मन्।**
**ऋतेन यन्तो अधि सिन्धुमस्थुर्विदद्गन्धर्वो अमृतानि नाम ॥४॥**

महान् मृगको घोष बुझ्ने विद्वान्‌ले त्यसको स्वरूप जानेपछि व्यक्त गर्दछन्। ऋतका मार्गमा गमनशील सिन्धुका अधिपति गन्धर्व नै अमृतरूपी प्रवाहका ज्ञाता हुन्।

**अप्सरा जारमुपसिष्मियाणा योषा बिभर्ति परमे व्योमन्।**
**चरत्प्रियस्य योनिषु प्रियः सन्त्सीदत्पक्षे हिरण्यये स वेनः ॥५॥**

पत्नीका मन्द मुस्कानले प्रेमी पतिलाई यथोचित स्थानमा विराजमान गराएझैं परम व्योममा

अप्सराले वेनलाई धारण गरेकी थिइन्। उनी आफ्ना प्रिय वेनका घरमा सञ्चरित भइन्। वेन उनका प्रियतम भएर प्रकाशित क्षेत्रमा विराजित हुन्छन्।

**नाके सुपर्णमुप यत्पतन्तं हृदा वेनन्तो अभ्यचक्षत त्वा।**
**हिरण्यपक्षं वरुणस्य दूतं यमस्य योनौ शकुनं भुरण्युम् ॥६॥**

सुनौला पँखेटा भएको पक्षीभैँ आकाशमा गतिशील, सर्वत्र पोषण प्रदान गर्ने वरुणका दूत हे वेनदेव ! दुनियाँले तिमीलाई हृदयमा राख्छ। अग्निको उत्पत्तिस्थल अन्तरिक्षमा तिमीलाई चरोभैँ विचरण गर्दै हामी देख्छौँ।

**ऊर्ध्वो गन्धर्वो अधि नाके अस्थात्प्रत्यङ् चित्रा बिभ्रदस्यायुधानि।**
**वसानो अत्कं सुरभिं दृशे कं स्वर्ण नाम जनत प्रियाणि ॥७॥**

किरणरूपी वेदवाणी धारण गर्ने वेनदेव अन्तरिक्षको माथिल्लो भागमा रहेका छन्। उनी आफ्नो अद्भुत शस्त्र धारण गरेर सुन्दर रूपमा सजिन्छन्। उनले पनि सूर्यकै जस्तो विभिन्न नामका प्रिय वस्तु उत्पादन गर्दछन्।

**द्रप्सः समुद्रमभि यज्जिगाति पश्यन्गृध्रस्य चक्षसा विधर्मन्।**
**भानुः शुक्रेण शोचिषा चकानस्तृतीये चक्रे रजसि प्रियाणि ॥८॥**

उनी विकसित हुँदै द्रप्सलाई गिद्धजस्तो दृष्टिले हेर्दछन्। उनी समुद्रमा पुग्दछन्, त्यस बेला भानुजस्तै शुभ्र तेजले चम्कँदै प्रिय रज उत्पन्न गर्दछन्।

[सूक्त - १२४]

**ऋषि** - अग्नि वरुण सोम। **देवता** - अग्नि वरुण सोम इन्द्र। **छन्द** - त्रिष्टुप् जगती।

**इमं नो अग्न उप यज्ञमेहि पञ्चयामं त्रिवृतं सप्ततन्तुम्।**
**असो हव्यवाडुत नः पुरोगा ज्योगेव दीर्घं तम आशयिष्ठाः ॥१॥**

हे अग्निदेव ! हाम्रा यस पाँच नियामक, तीन प्रकारका अनुष्ठान र सात होता भएका यज्ञतर्फ आऊ। तिमी नै हाम्रा हविवाहक र अग्रगामी दूत हौ। तिमी चिरकालदेखि नै अन्धकारपूर्ण गुफा प्रकाशित गराउँछौ।

**अदेवाद्देवः प्रचता गुहा यन्प्रपश्यमानो अमृतत्वमेमि।**
**शिवं यत्सन्तमशिवो जहामि स्वात्सख्यादरणीं नाभिमेमि ॥२॥**

दीप्तिहीन अव्यक्त स्थितिमा रहँदा म देवताका प्रार्थनाले प्रकट भएर स्वयं ज्योतिर्मान् हुन्छु। देवताले श्रेष्ठ रीतिले स्तुतिपूर्वक प्रदान गरेको हविर्भाग प्राप्त गरेर अमर देवत्व पद प्राप्त गर्दछु। कुशलतापूर्वक यज्ञ सम्पन्न हुँदा म अव्यक्त रूपमै फिर्ता जान्छु र अभिन्न सखारूपी सनातन आवासमा रहन्छु।

**पश्यन्नन्यस्या अतिथिं वयाया ऋतस्य धाम वि मिमे पुरूणि।**
**शंसामि पित्रे असुराय शेवमयज्ञियाद्यज्ञियं भागमेमि ॥३॥**

पृथ्वीअतिरिक्त आकाशको गमनमार्गमा चल्ने सूर्यको गतिअनुसार नै म वसन्त आदि विभिन्न ऋतुमा यज्ञका अनेकौं स्थान बनाउँछु। पितृरूप देवताको सुखका लागि म स्तोत्र गाउँछु। यज्ञको भावनाविहीन र अपवित्र स्थान छोडेर म यज्ञका लागि उचित स्थानतर्फ जान्छु।

**बह्वीः समा अकरमन्तरस्मिन्निन्द्रं वृणानः पितरं जहामि।**
**अग्निः सोमो वरुणस्ते च्यवन्ते पर्यावर्द्राष्ट्रं तदवाम्यायन् ॥४॥**

यज्ञस्थलमा मैले अनेकौं वर्ष बिताएको छु। यहाँ इन्द्रदेवलाई वरण गर्दै उत्पत्तिस्थल त्याग्दछु। अग्नि, सोम र वरुण आदिको पतन हुँदा म प्रकट भएर उनलाई संरक्षण गर्छु।

**निर्माया उ त्ये असुरा अभूवन्त्वं च मा वरुण कामयासे।**
**ऋतेन राजन्ननृतं विविञ्चन्मम राष्ट्रस्याधिपत्यमेहि ॥५॥**

म आएपछि सबै असुर सामर्थ्यविहीन भए। हे वरुणदेव ! तिमी पनि मेरो प्रार्थना गर। हे राजन् ! सत्यबाट असत्य छुट्याएर मेरा राष्ट्रको आधिपत्य स्वीकार गर।

**इदं स्वरिदमिदास वाममयं प्रकाश उर्वन्तरिक्षम्।**
**हनाव वृत्रं निरेहि सोम हविष्ट्वा सन्तं हविषा यजाम ॥६॥**

हे सोमदेव ! यो सुन्दर स्वर्ग अति रमणीय छ। प्रकाश र व्यापक अन्तरिक्ष हेर। वृत्रासुर संहार गर्न हामी दुई उत्पन्न भएका थियौं। तिमी यजनीय छौ, तिम्रा लागि म यजनीय पदार्थ समर्पित गर्दछु।

**कविः कवित्वा दिवि रूपमासजदप्रभूती वरुणो निरपः सृजत्।**
**क्षेमं कृण्वाना जनयो न सिन्धवस्ता अस्य वर्णं शुचयो भरिभ्रति ॥७॥**

क्रान्तदर्शी मित्रदेवले आफ्ना कर्तृत्व सामर्थ्यले दिव्यलोकमा तेज स्थापित गराए। वरुणदेव अति थोरै प्रयासले नै मेघमा जल सृष्टि गर्दछन्। जल वर्षाले परिपूर्ण नदीहरू स्त्रीले पतिको सेवा गरेझैँ विश्वको हित संरक्षणमा संलग्न छन्। तिनीहरू पवित्र भएर बग्दै वरुणदेवको तेज धारण गर्दछन्।

**ता अस्य जेष्ठमिन्द्रियं सचन्ते ता ईमा क्षेति स्वधया मदन्ती।**
**ता ईं विशो न राजानं वृणाना बीभत्सुवो अप वृत्रादतिष्ठन् ॥८॥**

जलले वरुणदेवको अत्यन्त श्रेष्ठ सामर्थ्य प्राप्त गर्दछ। हविष्यान्न प्राप्त गरेर सबैलाई सन्तुष्ट गराउँदै प्रसन्नचित्त भएर जल वरुणदेवसित पुग्दछ। डराएका प्रजाले राजाको आश्रय लिएझैँ वृत्रासुरदेखि डराएको जल त्यहाँबाट भागेर वरुणका आश्रयमा पुग्यो।

**बीभत्सूनां सयुजं हंसमाहुरपां दिव्यानां सख्ये चरन्तम्।**
**अनुष्टुभमनु चर्चूर्यमाणमिन्द्रं नि चिक्युः कवयो मनीषा ॥९॥**

भयभीत जलका मित्र इन्द्रदेव या सूर्यदेव हुन भनिन्छ। उनीहरू दिव्य गुणले युक्त जलका मित्रतामा रहेर स्तुतियोग्य भएका छन्। यी गुणयुक्त इन्द्रदेवलाई मेधावी ऋषिहरू विवेकपूर्वक अर्चना गर्दछन्।

[सूक्त – १२५]

**ऋषि – वागाम्भृणी। देवता – वागाम्भृणी। छन्द – त्रिष्टुप् जगती।**

**अहं रुद्रेभिर्वसुभिश्चराम्यहमादित्यैरुत विश्वदेवैः।**
**अहं मित्रावरुणोभा बिभर्म्यहमिन्द्राग्नी अहमश्विनोभा ॥१॥**

म वाग्देवी रुद्रगण र वसुगणसँगै भ्रमण गर्दछु। म आदित्यगण र विश्वेदेवसँग रहन्छु। मित्रावरुण, इन्द्र, अग्नि र दुवै अश्विनीकुमार सबैलाई म नै धारण गर्दछु।

**अहं सोममाहनसं बिभर्म्यहं त्वष्टारमुत पूषणं भगम्।**
**अहं दधामि द्रविणं हविष्मते सुप्राव्येऽयजमानाय सुन्वते ॥२॥**

ढुङ्गामा पिँधिएको सोम, त्वष्टा, पूषा र भग मेरै आश्रयमा हुन्छन्। उत्तम हविबाट बनेको हविष्यान्न देवतालाई सन्तुष्ट हुने गरी मैले दिने गरेकी छु र सोमरस पेल्ने यजमानका यज्ञलाई खोजेको जस्तै धन प्रदान गरेकी छु।

**अहं राष्ट्री सङ्गमनी वसूनां चिकितुषी प्रथमा यज्ञियानाम्।**
**तां मा देवा व्यदधुः पुरुत्रा भूरिस्थात्रां भूर्यावेशयन्तीम् ॥३॥**

जगदीश्वरी, धनप्रदात्री, ज्ञानवती र यज्ञका उपयोगी देवतामा सर्वोत्तम वाग्देवी मै हुँ। मेरो स्वरूप विभिन्न रूपमा विद्यमान छ र आश्रयस्थान पनि विस्तृत छ। सबै देवताले विभिन्न किसिमले मलाई नै प्रतिपादन गर्दछन्।

**मया सो अन्नमत्ति यो विपश्यति यः प्राणिति य ईं शृणोत्युक्तम्।**
**अमन्तवो मां त उप क्षियन्ति श्रुत श्रद्धिवं ते वदामि ॥४॥**

प्राणीमा हुने जीवनशक्ति, दर्शनक्षमता र अन्न भोग गर्ने सामर्थ्य म वाग्देवीकै सहयोगले प्राप्त हुन्छन्। मेरो सामर्थ्य नजान्नेहरू विनाश हुन्छन्। हे बुद्धिमान् मित्र हो ! तिमीहरू ध्यान देऊ, मैले भनेको कुरो श्रद्धाको विषय हो।

**अहमेव स्वयमिदं वदामि जुष्टं देवेभिरुत मानुषेभिः।**
**यं कामये तंतमुग्रं कृणोमि तं ब्रह्माणं तमृषिं तं सुमेधाम् ॥५॥**

देवता र मानिसले श्रद्धापूर्वक मनन गर्ने विचारका सन्देश मबाट नै प्रसारित हुन्छन्। मेरो कृपादृष्टि भएका बलशाली स्तोता ऋषि अथवा श्रेष्ठ बुद्धिमान् हुन्छन्।

**अहं रुद्राय धनुरा तनोमि ब्रह्मद्विषे शरवे हन्तवा उ।**
**अहं जनाय समदं कृणोम्यहं द्यावापृथिवी आ विवेश ॥६॥**

रुद्रदेवले ब्रह्मद्रोही शत्रु विध्वंस गर्न सचेत हुँदा दुष्टलाई दुःख दिने रुद्रको धनुषवाण म नै ताकिदिन्छु। मानिसको हितका लागि म सङ्ग्राम गर्दछु। म द्युलोक र पृथ्वी दुवैमा व्याप्त भएर रहन्छु।

अहं सुवे पितरमस्य मूर्धन्मम योनिरप्स्वन्तः समुद्रे।
ततो वि तिष्ठे भुवनानु विश्वोतामूं द्यां वर्ष्मणोप स्पृशामि ॥७॥

जगत्का सर्वोच्च स्थानको दिव्यलोक मैले नै प्रकट गरेकी हुँ। मेरो उत्पत्तिस्थल विराट् आकाशका अप्तत्त्वमा छ। उसै स्थानबाट सम्पूर्ण विश्वमा म व्याप्त हुन्छु। महान् अन्तरिक्षलाई मैले नै आफ्ना उन्नत देहले स्पर्श गरेकी छु।

अहमेव वात इव प्र वाम्यारभमाणा भुवनानि विश्वा।
परो दिवा पर एना पृथिव्यैतावती महिना सं बभूव ॥८॥

समस्त लोक बनाएर म वायुजस्तै सबै ठाउँमा विचरण गर्दछु। मेरो महिमा स्वर्गलोक र पृथ्वीभन्दा पनि महान् छ।

[सूक्त - १२६]

ऋषि - शैलूषि वामदेव्य। देवता - विश्वेदेवा। छन्द - बृहती त्रिष्टुप्।

न तमंहो न दुरितं देवासो अष्ट मर्त्यम्।
सजोषसो यमर्यमा मित्रो नयन्ति वरुणो अति द्विषः ॥१॥

हे देवता हो ! अर्यमा, मित्र र वरुणदेवको रिस गर्नेबाट बचाएर तिमीहरूले अघि बढाएका मानिस पापरहित भएर सधैं दुर्गतिबाट पर रहन्छन्।

तद्धि वयं वृणीमहे वरुण मित्रार्यमन्।
येना निरंहसो यूयं पाथ नेथा च मर्त्यमति द्विषः ॥२॥

हे वरुण, मित्र र अर्यमा देव हो ! जुन उपायले तिमीहरू मानिसलाई पापबाट जोगाउँछौ र शत्रुबाट रक्षा गर्दछौ, त्यसका लागि हामी तिमीहरूलाई प्रार्थना गर्दछौं।

ते नूनं नोऽयमूतये वरुणो मित्रो अर्यमा।
नयिष्ठा उ नो नेषणि पर्षिष्ठा उ नः पर्षण्यति द्विषः ॥३॥

हे मित्र, वरुण र अर्यमा देवता हो ! तिमीहरू हाम्रो संरक्षण सुनिश्चित गर्दै सन्मार्गतर्फ प्रेरित गर। हामीलाई सङ्कटबाट पार लगाओ र शत्रुले दिने दुःखबाट जोगाओ।

यूयं विश्वं परि पाथ वरुणो मित्रो अर्यमा।
युष्माकं शर्मणि प्रिये स्याम सुप्रणीतयोऽति द्विषः ॥४॥

वरुण, मित्र र अर्यमा आदि सबै देवताले सम्पूर्ण विश्व श्रेष्ठ रीतिले सुरक्षा गर्दछन्। श्रेष्ठ सत्कारयोग्य हे देवता हो ! तिमीहरूका अत्यन्त प्रीतियुक्त, श्रेष्ठ सुखका छायामा हामी रहन पाऔं र दुष्ट शत्रुबाट सुरक्षित रहौं।

आदित्यासो अति स्रिधो वरुणो मित्रो अर्यमा।
उग्रं मरुद्भी रुद्रं हुवेमेन्द्रमग्निं स्वस्तयेऽति द्विषः ॥५॥

अदितिपुत्र वरुण, मित्र र अर्यमा यी सबै देवताले हामीलाई दुष्ट शत्रुबाट जोगाऊन्। हामी शत्रुबाट छुटकारा पाउन र कल्याण लाभ गर्नका लागि मरुत्हरूसँगै तेजस्वी रुद्र, इन्द्र र अग्निदेवलाई आह्वान गर्दछौं।

नेतार ऊ षु णस्तिरो वरुणो मित्रो अर्यमा।
अति विश्वानि दुरिता राजानश्चर्षणीनामति द्विषः ॥६॥

नेतृत्व क्षमताले सम्पन्न वरुण, मित्र र अर्यमादेवले हाम्रो पापकर्म हटाएर सुखदायक मार्गतिर प्रेरित गरुन्। मानिसका स्वामी देवताले हामीलाई पापबाट मुक्त गराऊन् र विकाररूपी शत्रुबाट जोगाऊन्।

शुनमस्मभ्यमूतये वरुणो मित्रो अर्यमा।
शर्म यच्छन्तु सप्रथ आदित्यासो यदीमहे अति द्विषः ॥७॥

वरुण, मित्र र अर्यमा देवलाई हामी सुख र संरक्षण प्राप्त गर्नका लागि प्रार्थना गर्दछौं। यी अदितिपुत्रले सुखतर्फ हामीलाई प्रेरित गरुन्। उनीहरूले सबै किसिमका शत्रुनाशक बल हामीलाई प्रदान गरुन् र शत्रुबाट बचाऊन्।

यथा ह त्यद्वसवो गौर्यं चित्पदि षितामभुञ्चता यजत्राः ।
एवो ष्व१स्मन्मुञ्चता व्यंहः प्र तार्यग्ने प्रतरं न आयुः ॥८॥

संरक्षक र यज्ञभागका अधिकारी हे देवता हो ! स्वच्छ वर्णका गाईका खुट्टा बाँधिएका बेला तिमीहरूले नै बन्धनबाट मुक्त गराएका थियौ। हामीलाई पनि पापबाट मुक्त गराओ। हे अग्निदेव ! हामीलाई दीर्घायु प्रदान गर।

[सूक्त - १२७]

ऋषि - कुशिक सौभर। देवता - रात्रि। छन्द - गायत्री।

रात्री व्यख्यदायती पुरुत्रा देव्य१क्षभिः। विश्वा अधि श्रियोऽधित ॥१॥

अनेकौं भागमा फैलिने, आउँदै गरेकी नक्षत्ररूपी नेत्रले संसार हेर्ने रात्रिदेवी सबै किसिमका सौन्दर्य धारण गरेकी छिन्।

ओर्वप्रा अमर्त्या निवतो देव्यु१द्वतः। ज्योतिषा बाधते तमः ॥२॥

अविनाशी रात्रिदेवी सर्वप्रथम अन्तरिक्ष र त्यसपछि तल र अग्ला ठाउँ ढाक्दछिन्। उनी ग्रहनक्षत्र आदिका रूपमा आफ्ना तेजले अन्धकार नाश गराउँछिन्।

निरु स्वसारमस्कृतोषसं देव्यायती। अपेदु हासते तमः ॥३॥

आउँदै गर्ने रात्रिले बहिनी उषालाई प्रतिष्ठित गराएपछि उषाले अन्धकार नष्ट गर्दछिन्।

सा नो अद्य यस्या वयं नि ते यामन्नविक्ष्महि। वृक्षे न वसतिं वयः ॥४॥

जसको आगमन हुँदा चरो रुखमा गएझैं हामी घरमा पसेर विश्राम गर्दछौं ती रात्रिदेवी हाम्रा लागि कल्याणदायी होऊन्।

नि ग्रामासो अविक्षत नि पद्वन्तो नि पक्षिणः। नि श्येनासश्चिदर्थिनः ॥५॥

रातमा सबै गाउँले मानिस सुखपूर्वक सुत्दछन्। गोडाले हिँड्ने गाई, अश्व आदि पशु र शीघ्रगामी श्येन आदि पक्षी शान्त भएर सुत्दछन्।

यावया वृक्यं१वृकं यवय स्तेनमूर्म्ये। अथा नः सुतरा भव ॥६॥

हे निशादेवी ! ब्वाँसाका भालेपोथी हामीदेखि पर लैजाऊ, चोरलाई हामीदेखि पर लगिदेऊ। हाम्रा लागि तिमी सबै किसिमले कल्याणप्रद होऊ।

उप मा पेपिशत्तमः कृष्णं व्यक्तमस्थित। उष ऋणेव यातय ॥७॥

रात्रिको अन्धकार स्पष्ट रूपमा देखिन्छ। हे उषादेवी ! धन प्रदान गरेर स्तोताको ऋण नष्ट गरेझैं यो अन्धकार नष्ट गराऊ।

उप ते गा इवाकरं वृणीष्व दुहितर्दिवः। रात्रि स्तोमं न जिग्युषे ॥८॥

हे आकाशकन्या ! तिमीलाई हामी दुधालु गाईजस्तै स्तोत्र गाउँदै प्राप्त गरौं। तिमी विनम्र भएर स्तोत्रझैं हवि पनि ग्रहण गर।

[सूक्त - १२८]

ऋषि - विहव्य आङ्गिरस। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप् जगती।

ममाग्ने वर्चो विहवेष्वस्तु वयं त्वेन्धानास्तन्वं पुषेम।
मह्यं नमन्तां प्रदिशश्चतस्रस्त्वयाध्यक्षेण पृतना जयेम ॥१॥

हे अग्निदेव ! सङ्ग्रामका समयमा हामीभित्र तेज जागृत होस्। तिमीलाई समिधाले प्रज्वलित गर्दै हामी आफ्नो देह परिपुष्ट गराउँछौं। हाम्रा लागि चारै दिशा झुकिदिऊन्। तिमीलाई स्वामीका रूपमा प्राप्त गरेर हामी शत्रुसेनामाथि विजय प्राप्त गरौं।

मम देवा विहवे सन्तु सर्व इन्द्रवन्तो मरुतो विष्णुरग्निः।
ममान्तरिक्षमुरुलोकमस्तु मह्यं वातः पवतां कामे अस्मिन् ॥२॥

इन्द्रदेवसँगै मरुत्गण, विष्णु र अग्नि आदि सबैले युद्धमा हामीलाई सहयोग गरून्। अन्तरिक्षजस्तै विस्तृत लोक हाम्रा लागि प्रकाशमान होस्। हाम्रो इच्छा लागेका कार्यमा वायु अनुकूल भएर प्रवाहित होस्।

मयि देवा द्रविणमा यजन्तां मय्याशीरस्तु मयि देवहूतिः।
दैव्या होतारो वनुषन्त पूर्वेऽरिष्टाः स्याम तन्वा सुवीराः ॥३॥
श्रेष्ठ यज्ञ आदि कार्यले प्रसन्न भएर सबै देवताले हामीलाई ऐश्वर्य प्रदान गरुन्। हामी देवशक्तिलाई आह्वान गरौं। उहिले नै देवतालाई आहुति समर्पित गर्ने होताहरू अनुकूल भएर देवताको अर्चना गरुन्। शारीरिक दृष्टिले सुदृढ भएर हामी वीर सन्ततिले सम्पन्न होऔं।

मह्यं यजन्तु मम यानि हव्याकूतिः सत्या मनसो मे अस्तु।
एनो मा नि गां कतमच्चनाहं विश्वे देवासो अधि वोचता नः ॥४॥
ऋत्विक्हरूले हाम्रो चरु, पुरोडाश आदि यज्ञकसामग्री आहुतिका रूपमा देवतालाई समर्पित गरुन्। हाम्रा मनको सङ्कल्प पूर्ण होस्। हामी कुनै पापमा लिप्त नहोऔं। हे विश्वेदेव हो ! तिमीहरू हामीलाई आशीर्वाद युक्त वचन प्रदान गर।

देवीः षुडुर्वीरुरु नः कृणोत विश्वे देवास इह वीरयध्वम्।
मा हास्महि प्रजया मा तनूभिर्मा रधाम द्विषते सोम राजन् ॥५॥
हे छ वटी देवी हो ! हामीलाई प्रचुर धन र बल प्रदान गर। हे देवता हो ! धन आदि प्राप्त गर्नका लागि पराक्रम गर र हामीलाई धन प्राप्त होस्। हाम्रा सन्तति र शरीरको अनिष्ट नहोस्। हे प्रकाशवान् सोम ! विद्वेषी शत्रुबाट हामी कहिल्यै परास्त नहोऔं।

अग्ने मन्युं प्रतिनुदन्परेषामदब्धो गोपाः परि पाहि नस्त्वम्।
प्रत्यञ्चो यन्तु निगुतः पुनस्तेऽमैषां चित्तं प्रबुधां वि नेशत् ॥६॥
हे अग्निदेव ! शत्रुको क्रोधित स्वभाव दबाएर दुर्द्धर्ष हुँदै हाम्रो सुरक्षा गर। व्यर्थ कुरा गर्ने शत्रु भयभीत भएर पछिल्तिर फर्कंदै भागून्। शत्रुको मनमस्तिष्क भ्रमित होस्।

धाता धातॄणां भुवनस्य यस्पतिर्देवं त्रातारमभिमातिषाहम्।
इमं यज्ञमश्विनोभा बृहस्पतिर्देवाः पान्तु यजमानं न्यर्थात् ॥७॥
निर्माताका पनि स्रष्टा, सम्पूर्ण विश्वका अधिपति, सर्वप्रेरक, पालनकर्ता र अहङ्कारी शत्रुमाथि विजेता इन्द्रदेवलाई हामी प्रार्थना गर्दछौं। अश्विनीकुमार, बृहस्पति र सबै प्रमुख देवताले यस यज्ञको संरक्षण गरुन् र यजमानलाई पापबाट जोगाऊन्।

उरुव्यचा नो महिषः शर्म यंसदस्मिन्हवे पुरुहूतः पुरुक्षुः।
स नः प्रजायै हर्यश्व मृळयेन्द्र मा नो रीरिषो मा परा दाः ॥८॥
सर्वव्यापक, पूजनीय, अनेकौं यजमानबाट बोलाइने, विभिन्न स्थानमा वास गर्ने इन्द्रदेव यस यज्ञमा आएर हामीलाई सुख प्रदान गरुन्। हे हरियो अश्वका स्वामी इन्द्रदेव ! हाम्रा सन्तति सुखी बनाऊ। हाम्रो प्रतिकूल नभएर अनिष्टबाट बचाऊ।

ये नः सपत्ना अप ते भवन्त्विन्द्राग्निभ्यामव बाधामहे तान्।
वसवो रुद्रा आदित्या उपरिस्पृशं मोग्रं चेत्तारमधिराजमक्रन् ॥९॥
हाम्रा शत्रुहरू हारुन्। हामी उनलाई इन्द्राग्निका सामर्थ्यले विनाश गर्दछौं। वसुगण, रुद्रगण र आदित्यगण यी सबै देवताले हामीलाई उच्च स्थानमा बसाएर पराक्रमी, ज्ञानसम्पन्न र सबैका अधिपति बनाऊन्।

[सूक्त - १२९]

**ऋषि** - प्रजापति परमेष्ठी। **देवता** - भाववृत्त। **छन्द** - त्रिष्टुप्।

नासदासीन्नो सदासीत्तदानीं नासीद्रजो नो व्योमा परो यत्।
किमावरीवः कुह कस्य शर्मन्नम्भः किमासीद्गहनं गभीरम् ॥१॥
प्रलयकालमा पञ्चमहाभूत आदि सृष्टिको अस्तित्व थिएन र अभावग्रस्त असत् सृष्टिको अस्तित्व पनि थिएन। त्यस बेला भूलोक, आकाश र आकाश आदिभन्दा परको लोक पनि थिएन। सबैलाई ढाक्ने ब्रह्माण्ड पनि थिएन। कसको स्थान कहाँ थियो ? अगाध र गहिरो जलको अस्तित्व त्यस बेला कहाँ थियो ?

न मृत्युरासीदमृतं न तर्हि न रात्र्या अह्न आसीत्प्रकेतः।
आनीदवातं स्वधया तदेकं तस्माद्धान्यन्न परः किं चनास ॥२॥
त्यस बेला न मृत्यु थियो, न अमरताकै अस्तित्व थियो। दिन र रातको ज्ञान थिएन, प्राणवायु पनि थिएन। एकमात्र ब्रह्मको अस्तित्व थियो। अन्य कुनै कुराको पनि अस्तित्व त्यस बेला थिएन।

तम आसीत्तमसा गूळ्हमग्रेऽप्रकेतं सलिलं सर्वमा इदम्।
तुच्छ्येनाभ्वपिहितं यदासीत्तपसस्तन्महिनाजायतैकम् ॥३॥

सृष्टिभन्दा पहिले प्रलयकालमा सम्पूर्ण विश्व मायावी अज्ञान नामका अन्धकारले ग्रस्त थियो। सबै अव्यक्त र सर्वत्र एकै किसिमको प्रवाह थियो। उस बेला चारैतिर सत् वा असत् तत्त्वले ढाकेको थियो। एउटा अविनाशी तत्त्व तपस्याका प्रभावले उत्पन्न भयो।

कामस्तदग्रे समवर्तताधि मनसो रेतः प्रथमं यदासीत्।
सतो बन्धुमसति निरविन्दन्हृदि प्रतीष्या कवयो मनीषा ॥४॥

सर्वप्रथम परब्रह्म परमात्माका मनमा विराट् सृष्टि उत्पन्न गर्ने इच्छा प्रकट भयो। उसै मनबाट सबैभन्दा पहिले उत्पत्तिको कारण उत्पन्न भयो। मेधावी ज्ञानीले विवेक, बुद्धिले हृदयमा विचार गरेर व्यक्त नहुने असत्बाट सत् तत्त्वको उत्पत्तिस्थान ठम्याए।

तिरश्चीनो विततोरश्मिरेषामधः स्विदासी३दुपरि स्विदासी३त्।
रेतोधा आसन्महिमान आसन्त्स्वधा अवस्तात्प्रयतिः परस्तात् ॥५॥

बीज धारण गर्ने देवताको प्रकाश तेर्छो भएर तल र माथि फैलियो र देवताका महिमाले जल प्रेरित गरे। स्वधाको भोग्यस्थान तल र प्रयतिको स्थान माथि स्थिर गराए।

को अद्धा वेद क इह प्र वोचत्कुत आजाता कुत इयं विसृष्टिः।
अर्वाग्देवा अस्य विसर्जनेनाथा को वेद यत आबभूव ॥६॥

यो सृष्टि कहाँबाट र कसरी उत्पन्न भएको हो भन्ने कुन मानिसले जान्दछ र कसले भन्न सक्दछ ? किनभने विद्वान्हरू पनि सृष्टिभन्दा पछि नै उत्पन्न भएका हुन्। त्यसैले सृष्टि उत्पन्न कसरी भयो भन्ने कुरो उचित रूपमा बुझ्न को सक्ला ?

इयं विसृष्टिर्यत आबभूव यदि वा दधे यदि वा न।
यो अस्याध्यक्षः परमे व्योमन्त्सो अङ्ग वेद यदि वा न वेद ॥७॥

यस सृष्टिको उत्पादन कहाँबाट भयो, कसले रचना गरेको हो र कसले गरेको होइन, यी सबै कुरा एक मात्र परमेश्वरले जान्दछन्। परमधाममा रहने उनी सृष्टिका अध्यक्ष हुन्। हुन सक्छ, उनले पनि यस सम्बन्धमा पूरा जानेका छैनन् कि ?

[सूक्त – १३०]

ऋषि – यज्ञ प्राजापत्य। देवता – भाववृत्त। छन्द – त्रिष्टुप् जगती।

यो यज्ञो विश्वतस्तन्तुभिस्तत एकशतं देवकर्मेभिरायतः।
इमे वयन्ति पितरो य आययुः प्र वयाप वयेत्यासते तते ॥१॥

यो सृष्टि यज्ञको रूप हो। यस सृष्टिमा पञ्चभूत रूपी वस्त्र बुनिन्छ। यो चिरकालसम्म रहने सृष्टि देवताका दिव्य कर्मले स्थिर रहन्छ। यस सृष्टिरूपी यज्ञमा पितृहरू कपडा बुन्दै अनेकौं किसिमका उत्कृष्ट र निकृष्ट वस्त्र या पदार्थको रचना गर्दछन्।

पुमाँ एनं तनुत उत्कृणत्ति पुमान्वि तत्ने अधि नाके अस्मिन्।
इमे मयूखा उप सेदुरू सदः सामानि चक्रुस्तसराण्योतवे ॥२॥

प्रजापति परमेश्वर नै यस सृष्टिका उत्पादक र संहारक हुन्। उनै पुरुषका सामर्थ्यले यस सृष्टिको विस्तार गर्दछ। यस यज्ञस्थलमा परमात्माको किरणरूपी शक्ति निवास गर्दछ र अनेकौं किसिमका सामरूपी सुख उत्पन्न गर्दछन्।

कासीत्प्रमा प्रतिमा किं निदानमाज्यं किमासीत्परिधिः क आसीत्।
छन्दः किमासीत्प्रउगं किमुक्थं यद्देवा देवमयजन्त विश्वे ॥३॥

सम्पूर्ण देवशक्तिले यज्ञ सम्पन्न गरेका बेला त्यसको सीमा कस्तो थियो ? प्रतिमा कस्तो थियो ? उनका सङ्कल्प के थिए? प्रमाण के थिए ? छन्द र स्तोत्र कस्ता थिए ?

अग्नेर्गायत्र्यभवत्सयुग्वोष्णिहया सविता सं बभूव।
अनुष्टुभा सोम उक्थैर्महस्वान्बृहस्पतेर्बृहती वाचमावत् ॥४॥

अग्निदेव गायत्री छन्दका सहायक भए र उष्णिक् छन्दका सहायक सविता भए। सोम अनुष्टुप् छन्दका र उक्थको सम्बन्ध तेजस्वी सूर्यसित भयो। त्यसै गरी बृहती छन्दले बृहस्पतिका वाणीको आश्रय लियो।

विराण्मित्रावरुणयोरभिश्रीरिन्द्रस्य त्रिष्टुबिह भागो अह्नः ।
विश्वान्देवाञ्जगत्या विवेश तेन चाक्लृप्र ऋषयो मनुष्याः ॥५॥

विराट् छन्द मित्रावरुण देवतामा आश्रित भयो र त्रिष्टुप् छन्द यस यज्ञमा इन्द्र र दिनका भागमा पर्‍यो। जगती छन्दले अन्य देवताको आश्रय लियो। यस यज्ञबाट सम्पूर्ण ऋषि र मानिस सामर्थ्यशाली भए।

चाक्लृप्रे तेन ऋषयो मनुष्या यज्ञे जाते पितरो नः पुराणे ।
पश्यन्मन्ये मनसा चक्षसा तान् य इमं यज्ञमयजन्त पूर्वे ॥६॥

प्राचीन कालमा यस सृष्टियज्ञको उत्पत्ति हुँदा हाम्रा पूर्वज ऋषि र मानिसले माथि बताइएको नियमअनुसार यज्ञको अनुष्ठान सम्पन्न गरे। उहिल्यै यज्ञ सम्पन्न गर्नेहरू मनका आँखाले हामीले उनलाई देखिरहेका छौं भन्ने अनुभव हामीलाई गराउँथे।

सहस्तोमाः सहछन्दस आवृतः सहप्रमा ऋषयः सप्त दैव्याः ।
पूर्वेषां पन्थामनुदृश्य धीरा अन्वालेभिरे रथ्योऽ न रश्मीन् ॥७॥

धैर्यवान् सात ऋषिले स्तोत्र र छन्द सङ्ग्रह गरेर बारम्बार यज्ञको अनुष्ठान गर्दै यज्ञका विधालाई स्थायित्व प्रदान गरे। सारथीले घोडाको लगाम हातले समातेझैं मेधावी ऋषिले पूर्वजहो परम्परामा अति सशक्त दृष्टि राखेर यज्ञको अनुष्ठान सम्पन्न गरे।

[सूक्त - १३१]

**ऋषि** - सुकीर्ति काक्षीवत। **देवता** - इन्द्र अश्विनीकुमार। **छन्द** - त्रिष्टुप् अनुष्टुप्।

अप प्राच इन्द्र विश्वाँ अमित्रानपापाचो अभिभूते नुदस्व ।
अपोदीचो अप शूराधराच उरौ यथा तव शर्मन्मदेम ॥१॥

शत्रुलाई पराजित गर्ने हे इन्द्रदेव ! तिमी हाम्रा समक्ष आउने सबै शत्रु हटाऊ। पछिबाट आउने, उत्तर तथा दक्षिणबाट आउने शत्रु पर हटाऊ। हामी तिम्रा नजिकै सुखपूर्वक निवास गर्न सकौं।

कुविदङ्ग यवमन्तो यवं चिद्यथा दान्त्यनुपूर्वं वियूय ।
इहेहैषां कृणुहि भोजनानि ये बर्हिषो नमोवृक्तिं न जग्मुः ॥२॥

हे इन्द्रदेव ! जौ खेती गर्ने किसानले बारम्बार बाली काटेझैं, देवताका प्रिय तिमी दुष्ट दमन गरेर श्रेष्ठजनको पोषण बारम्बार प्रदान गर्दै उनलाई रक्षा गर।

नहि स्थूर्यृतुथा यातमस्ति नोत श्रवो विविदे सङ्गमेषु ।
गव्यन्त इन्द्रं सख्याय विप्रा अश्वायन्तो वृषणं वाजयन्तः ॥३॥

एउटा मात्रै पाङ्ग्रो भएको गाडा कहिल्यै भनेको समयमा उपयुक्त ठाउँमा पुग्दैन। युद्धका समयमा पनि त्यसबाट अन्न लाभ हुँदैन। त्यसैले हामी गाई, गोरु, अश्व, अन्न र बलको कामना गर्दै वृष्टिवर्षक इन्द्रदेवको मित्रताका लागि आह्वान गर्दछौं।

युवं सुराममश्विना नमुचावासुरे सचा ।
विपिपाना शुभस्पती इन्द्रं कर्मस्वावतम् ॥४॥

हे अश्विनीकुमार हो ! नमुची नामका असुरका अधिकारमा रहेको श्रेष्ठ मधुर सोमरस प्राप्त गरेर पान गर्दै तिमीहरू दुवै शुभ कर्मका पालक इन्द्रदेवको रक्षा गर।

पुत्रमिव पितरावश्विनोभेन्द्रावथुः काव्यैर्दंसनाभिः ।
यत्सुरामं व्यपिबः शचीभिः सरस्वती त्वा मघवन्नभिष्णक् ॥५॥

हे इन्द्रदेव ! राक्षसको संसर्गले अशुद्ध भएको सोम पान गरेर सङ्कटग्रस्त हुँदा पनि पिताले पुत्रको रक्षा गरेझैं अश्विनीकुमारले तिम्रो रक्षा। तिमीले नमुची वध गरेर प्रसन्नता प्रदान गर्ने सोम पान गरेपछि देवी सरस्वती पनि तिम्रै अनुकूल भइन्।

इन्द्रः सुत्रामा स्ववाँ अवोभिः सुमृडीको भवतु विश्ववेदाः ।
बाधतां द्वेषो अभयं कृणोतु सुवीर्यस्य पतयः स्याम ॥६॥

उचित किसिमले संरक्षण प्रदान गर्नमा समर्थ इन्द्रदेवले हामीलाई संरक्षण प्रदान गरुन्। उनै सर्वज्ञ परमेश्वर हाम्रा शत्रुका संहारक होऊन्। हामीमा निर्भीकता स्थापित गरुन्, त्यसबाट हामी उत्तम बलका स्वामी बनौं।

तस्य वयं सुमतौ यज्ञियस्यापि भद्रे सौमनसे स्याम।
स सुत्रामा स्ववाँ इन्द्रो अस्मे आराच्चिद् द्वेषः सनुतर्युयोतु ॥७॥

यज्ञीय पुरुषका श्रेष्ठ बुद्धिमा हामी वास गरौं। कल्याणकारी श्रेष्ठ मनले हामी सम्पन्न होऔं। श्रेष्ठ संरक्षक र ऐश्वर्यवान् उनै इन्द्रदेव हाम्रा नजिक र टाढा लुकेका शत्रु सधैंका लागि पर भगाइदिऊन्।

[सूक्त - १३२]

ऋषि – शकपूत नार्मेध। देवता – मित्रावरुण। छन्द – विराड्रूपा न्यंकुसारिणी।

ईजानमिद् द्यौर्गूर्तावसुरीजानं भूमिरभि प्रभूषणि।
ईजानं देवावश्विनावभि सुम्नैरवर्धताम् ॥१॥

यज्ञ आदि कर्म सम्पन्न गर्ने स्तोतालाई आकाश र पृथ्वीले श्रेष्ठ अलङ्कार र श्रीसम्पन्न गराउँछन्। अश्विनीकुमारले यज्ञकर्ता मानिसलाई विभिन्न किसिमका सुखसाधनले परिपूर्ण गर्दछन्।

ता वां मित्रावरुणा धारयत्क्षिती सुषुम्नेषितत्वता यजामसि।
युवोः क्राणाय सख्यैरभि ष्याम रक्षसः ॥२॥

हे मित्र र वरुण देवता हो ! पृथ्वी धारण गर्ने तिमीहरू दुवै श्रेष्ठ सुखसाधनका अधिकारी हौ। सुखसाधन प्राप्त गर्नका लागि हामी हविष्यान्न समर्पित गरेर दुवैलाई अर्चना गर्दछौं। यजमानको कल्याणका लागि तिमीहरूका सहयोगले आसुरी शक्ति पराजित गरौं।

अध चिन्नु यद्दिधिषामहे वामभि प्रियं रेक्णः पत्यमानाः।
दद्वाँ वा यत्पुष्यति रेक्णः सम्वारन्नकिरस्य मघानि ॥३॥

हे मित्र र वरुण देवता हो ! हामीले स्तुति मन्त्रसँगै तिम्रा लागि यज्ञ सामग्री समर्पित गरेपछि चाँडै नै प्रिय धन उपलब्ध गराउँछौ। हवि प्रदाता यजमानले प्राप्त गर्ने धन कसैले पनि नष्ट गर्न सक्दैन।

असावन्यो असुर सूयत द्यौस्त्वं विश्वेषां वरुणासि राजा।
मूर्धा रथस्य चाकन्नैतावतैनसान्तकध्रुक् ॥४॥

हे प्राणदाता मित्रदेव ! आकाशमा प्रकाशित सूर्यदेव तिमीभन्दा भिन्न होइनन्। हे वरुणदेव ! तिमी सम्पूर्ण विश्वका अधिपति हौ। तिम्रा रथको शिखर हाम्रा यज्ञतर्फ उन्मुख छ। हिंसक संहार गर्ने यस यज्ञलाई कसैले अनिष्ट गर्न सक्दैन।

अस्मिन्त्स्वे३ तच्छकपूत एनो हिते मित्रे निगतान्हन्ति वीरान्।
अवोर्वा यद्धात्तनूष्ववः प्रियासु यज्ञियास्वर्वा ॥५॥

म शकपूतभित्र रहेको पाप पनि कल्याणकारी भएपछि मित्रदेवको अनुकूलता पाएर आक्रान्ता दुष्ट शत्रु विनाश गर्ने कारण बन्दछ। मित्रदेव आएर हाम्रा शरीरमा संरक्षण प्रदान गरुन् र यज्ञमा प्रयुक्त संसाधन संरक्षित गरुन्।

युवोर्हि मातादितिर्विचेतसा द्यौर्न भूमिः पयसा पुपूतनि।
अव प्रिया दिदिष्टन सूरो निनिक्त रश्मिभिः ॥६॥

विशिष्ट ज्ञानले सम्पन्न हे मित्र र वरुणदेवता हो ! तिमीहरूकी जन्मदातृ अदिति माता हुन्। द्युलोकजस्तै धर्ती पनि अन्नजलले उनले परिष्कृत गर्दछिन्। तिमीहरू हामीलाई प्रीतियुक्त धन प्रदान गर र सूर्यका रश्मिले सम्पूर्ण विश्वलाई परिपुष्ट गर।

युवं ह्यप्नराजावसीदतं तिष्ठद्रथं न धूर्षदं वनर्षदम्।
ता नः कणूकयन्तीर्नृमेधस्तत्रे अंहसः सुमेधस्तत्रे अंहसः ॥७॥

हे मित्र र वरुणदेव ! आफ्ना सत्कर्मले प्रकाशमान भएर आआफ्ना स्थानमा तिमीहरू प्रतिष्ठित हुन्छौ। उपद्रव गर्ने यी शत्रु पराजित गर्नका लागि तिमीहरू दुवै वनमा विहार गर्ने रथमा आरुढ होओ। आफ्ना प्रिय नृमेध र सुमेध नामका यज्ञ र तिनलाई सम्पन्न गर्ने ऋषिलाई विकृतिबाट बचाओ।

[सूक्त - १३३]

ऋषि – सुदास पैजवन। देवता – इन्द्र। छन्द – शक्वरी महापंक्ति त्रिष्टुप्।

प्रो ष्वस्मै पुरोरथमिन्द्राय शूषमर्चत। अभीके चिदु लोककृत्सङ्गे समत्सु वृत्रहास्माकं बोधि चोदिता नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥१॥

हे स्तोता हो ! इन्द्रदेवका रथका अगाडि रहने बलको उपासना गर। शत्रुसेनाको आक्रमणका

अवसरमा यी लोकपालक र शत्रुनाशक इन्द्रदेव नै प्रेरणाका आधार हुन्छन् भन्ने निश्चित जान। शत्रुको धनुषको प्रत्यञ्चा चुँडियोस् भन्ने हामी कामना गर्दछौं।

**त्वं सिन्धूँरवासृजोऽधराचो अहन्नहिम्। अशत्रुरिन्द्र जज्ञिषे विश्वं पुष्यसि वार्यं तं त्वा परि ष्वजामहे। नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥२॥**

हे इन्द्रदेव ! तिमी नदीका प्रवाहमा आउने अवरोधलाई हटाउँछौ र मेघ फोर्दछौ। तिमी शत्रुविहीन र सबैबाट वरणीय पदार्थका पोषक हौ। हामी तिमीलाई हविष्यान्न दिएर हर्षित गर्दछौं। शत्रुको धनुषको प्रत्यञ्चा चुँडियोस् भन्ने कामना गर्दछौं।

**वि षु विश्वा अरातयोऽर्यो नशन्त नो धियः। अस्तासि शत्रवे वधं यो न इन्द्र जिघांसति या ते रातिर्ददिर्वसु नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥३॥**

हामीमाथि आक्रमण गर्ने शत्रुको विनाश होस्। हे इन्द्रदेव ! हामीमाथि आक्रमण गर्ने जघन्य दुष्टलाई तिमी आफ्ना शस्त्रले मार्दछौ। हाम्रो बुद्धि तिमीतिर प्रेरित होस्। तिम्रो धन आदि प्राप्त होस्। शत्रुको धनुषको प्रत्यञ्चा चुँडियोस् भन्ने कामना गर्दछौं।

**यो न इन्द्राभितो जनो वृकायुरादिदेशति। अधस्पदं तमीं कृधि विबाधो असि सासहि र्नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥४॥**

हे इन्द्रदेव ! शस्त्र आदिले सम्पन्न भएर हाम्रा वरिपरि घुमिरहेका ब्वाँसाजस्ता हिंसक वृत्तिका दुष्ट मानिसलाई तिमी गोडाले मिचिदेऊ। अरू सबै शत्रुका धनुषको प्रत्यञ्चा चुँडियोस् भन्ने कामना गर्दछौं।

**यो न इन्द्राभिदासति सनाभिर्यश्च निष्ट्यः। अव तस्य बलं तिर महीव द्यौरध त्मना नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥५॥**

हे इन्द्रदेव ! निकृष्ट स्वभाव भएका अनिष्टकारी शत्रुको पराक्रम तिमी उसरी नै विनष्ट गराऊ, जसरी महान् द्युलोकले समस्त पदार्थ आफूभन्दा तल रहेकै देख्दछ। हाम्रा शत्रुको धनुषको प्रत्यञ्चा चुँडियोस् भन्ने कामना गर्दछौं।

**वयमिन्द्र त्वायवः सखित्वमा रभामहे। ऋतस्य नः पथा नयाति विश्वानि दुरिता नभन्तामन्यकेषां ज्याका अधि धन्वसु ॥६॥**

हे इन्द्रदेव ! हामी तिम्रा अनुगामी बनेर तिमीप्रति मित्रभाव परिपोषित गर्दछौं। हामीलाई यज्ञय सन्मार्गमा प्रेरित गर्दै सबै पाप र दुःखदायी दुष्परिणामबाट पार गर। शत्रुको धनुषको प्रत्यञ्चा चुँडियोस् भन्ने कामना गर्दछौं।

**अस्मभ्यं सु त्वमिन्द्र तां शिक्ष या दोहते प्रति वरं जरित्रे।**
**अच्छिद्रोध्नी पीपयद्यथा नः सहस्रधारा पयसा मही गौः ॥७॥**

हे इन्द्रदेव ! हामी स्तोतालाई तिमी सबै अभीष्ट मनोरथ पूर्ति हुने प्रेरणा प्रदान गर। पृथ्वीस्वरूपा विशाल स्तनयुक्त गाई सहस्र धाराले पोषक रसरूपी दुध दिएर हामीलाई परिपुष्ट गरोस्।

[सूक्त – १३४]

**ऋषि** – मान्धाता यौवनाश्व गोधा। **देवता** – इन्द्र। **छन्द** – महापंक्ति पंक्ति।

**उभे यदिन्द्र रोदसी आपप्राथोषाइव। महान्तं त्वा महीनां सम्राजं**
**चर्षणीनां देवी जनित्र्यजीजनद्भद्रा जनित्र्यजीजनत् ॥१॥**

तेजस्विनी उषाजस्तै द्युलोक र पृथ्वीलोकलाई प्रकाशले पूर्ण गराउने, प्राणीका स्वामी हे महान् इन्द्रदेव ! तिमीलाई कल्याण गर्ने देवमाता अदितिले जन्माएकी हुन्।

**अव स्म दुर्हणायतो मर्तस्य तनुहि स्थिरम्। अधस्पदं तमीं**
**कृधि यो अस्माँ आदिदेशति देवी जनित्र्यजीजनद्भद्रा जनित्र्यजीजनत् ॥२॥**

हे इन्द्रदेव ! हामीलाई परतन्त्र गराउने दुष्कर्मी शत्रुलाई गोडाले मिचिदेऊ। तिमीलाई कल्याणकारिणी अदिति माताले उत्पन्न गरेकी हुन्।

**अव त्या बृहतीरिषो विश्वश्चन्द्रा अमित्रहन्। शचीभिः शक्र**
**धूनुहीन्द्र विश्वाभिरूतिभि र्देवी जनित्र्यजीजनद्भद्रा जनित्र्यजीजनत् ॥३॥**

शत्रु हनन गर्ने, सामर्थ्यशाली हे इन्द्रदेव ! तिमी आफ्ना सामर्थ्य र कर्मले सबैलाई आह्लादित गर्दछौ। तिमी विपुल अन्नभण्डार हामीतिर पठाऊ र सबै किसिमले हाम्रो संरक्षण गर। तिमीलाई कल्याणकारिणी अदिति माताले उत्पन्न गरेकी हुन्।

अव यत्त्वं शतक्रतविन्द्र विश्वानि धूनुषे। रयिं न सुन्वते
सचा सहस्रिणीभिरूतिभि र्देवी जनित्र्यजीजनद्भद्रा जनित्र्यजीजनत् ॥४॥

हे सयौं यज्ञ गर्ने इन्द्रदेव ! तिमी सबै किसिमका अन्नधन लोकको हितका लागि प्रस्तुत गर्दछौ। सोम पेल्ने यजमानलाई हजारौं किसिमका सम्पदा, सुसन्तति र संरक्षण प्रदान गर्दछौ। तिमीलाई कल्याणकारिणी अदिति माताले उत्पन्न गरेको हुन्।

अव स्वेदाइवाभितो विष्वक्पतन्तु दिद्यवः। दूर्वायाइव तन्तवो
व्यऽस्मदेतु दुर्मति र्देवी जनित्र्यजीजनद्भद्रा जनित्र्यजीजनत् ॥५॥

इन्द्रदेवको वज्रास्त्र पसिनाको थोपाजस्तै चारैतिर संरक्षणका लागि प्रस्तुत होस्। दुबो मौलाएझैं उनका आयुध सर्वव्यापी होऊन्। दुर्बुद्धिग्रस्त शत्रु हामीदेखि पर होऊन्। तिमीलाई कल्याणकारिणी अदिति माताले उत्पन्न गरेको हुन्।

दीर्घं ह्यङ्कुशं यथा शक्तिं बिभर्षि मन्तुमः। पूर्वेण मघवन्पदाजो
वयां यथा यमो देवी जनित्र्यजीजनद्भद्रा जनित्र्यजीजनत् ॥६॥

हे ज्ञानवान् इन्द्रदेव ! महान् अङ्कुशजस्तो शक्ति तिमी धारण गर्दछौ। हे इन्द्रदेव ! अजबाट उत्पन्न पूर्व पदझैं तिमी आफ्ना सामर्थ्यले सबैलाई वशमा गर्दछौ। तिमीलाई कल्याणकारिणी अदिति माताले उत्पन्न गरेको हुन्।

नकिर्देवा मिनीमसि नकिरा योपयामसि मन्त्रश्रुत्यं चरामसि।
पक्षेभिरापिकक्षेभिरत्राभि सं रभामहे ॥७॥

हे देवता हो ! हामी याजक कोही पनि अमर्यादित र धर्मविहीन कर्म गर्दैनौं। हामी कसैको केही हानी गर्दैनौं। हातमा हवन सामग्री लिएर हामी यज्ञ आदि श्रेष्ठ कर्म सम्पन्न गर्दछौं।

[सूक्त - १३५]

ऋषि - कुमार यामायन। देवता - यम। छन्द - अनुष्टुप्।

यस्मिन्वृक्षे सुपलाशे देवैः सम्पिबते यमः।
अत्रा नो विश्पतिः पिता पुराणाँ अनु वेनति ॥१॥

सुन्दर पत्रले सुशोभित यमदेव देवतासँग बसेर सोमपान गर्ने वृक्षमा गएर म पुर्खाको सहायक बनूं भन्ने हाम्रा पिता प्रजापतिको अभिलाषा छ।

पुराणाँ अनुवेनन्तं चरन्तं पापयामुया।
असूयन्नभ्यचाकशं तस्मा अस्पृहयं पुनः ॥२॥

प्रजापति पिताले म पुर्खाको सहायक बनूं भन्ने इच्छा प्रकट गर्दा मैले निष्ठुरतापूर्वक उनका त्यस रहरप्रति विरक्ति प्रकट गरें, अहिले ममा उनीप्रति श्रद्धाभाव जागेको छ।

यं कुमार नवं रथमचक्रं मनसाकृणोः।
एकेषं विश्वतः प्राञ्चमपश्यन्नधि तिष्ठसि ॥३॥

हे कुमार नचिकेता ! तिमीले मसित पाङ्ग्राविनाको, एउटा दण्डको र सर्वत्र गमनशील रथको रहर गरेका थियौ र सोचविचार नगरीकनै तिमी त्यसमा आरूढ भयौ।

यं कुमार प्रावर्तयो रथं विप्रेभ्यस्परि।
तं सामानु प्रावर्तत समितो नाव्याहितम् ॥४॥

हे कुमार नचिकेता ! बुद्धिमान् साथीभाइ छोडेर तिमी जुन रथ लिएर आफैं जाँदै छौ, त्यो तिम्रा पिताका ज्ञानको उपदेशले चल्दछ। त्यही उपदेश नै रथका लागि नौकारूपी आश्रय हो। त्यसै नौकामा आरूढ भएर त्यस रथले यहाँबाट प्रस्थान गर।

कः कुमारमजनयद्रथं को निरवर्तयत्।
कः स्वित्तदद्य नो ब्रूयादनुदेयी यथाभवत् ॥५॥

बालक नचिकेताका जन्मदाता को हुन् ? यो बालक जीवनजगत्बाट यहाँ आइपुग्नका लागि कसले यो रथ पठाइदियो ? आज यो कुरो हामीसित कसले भन्न सक्छ ?

यथाभवदनुदेयी ततो अग्रमजायत।
पुरस्ताद् बुध्न आततः पश्चान्निरयणं कृतम् ॥६॥

जुन कारणले यो बालकलाई यमराजबाट भूलोकमा यिनका पितालाई जिम्मा लगाइन्छ, त्यसका

विषयमा पहिले नै बताइसकिएको छ। सबैभन्दा पहिले पिताका भनाइको मुख्य भाग भनियो, त्यसपछि फिर्ता ल्याउने उपाय पनि भनियो।

**इदं यमस्य सादनं देवमानं यदुच्यते।**
**इयमस्य धम्यते नाडीरयं गीर्भिः परिष्कृतः ॥७॥**

जसलाई देवताले निर्माण गरे, त्यो नै नियन्ता यमदेवको आश्रयस्थल हो भन्ने मानिसको भनाइ छ। यो वेणु नामको बाजा यमदेवको सन्तुष्टिका लागि बजाइन्छ। स्तुति मन्त्रले उनलाई सुशोभित गराइन्छ।

[सूक्त - १३६]

**ऋषि** - वातरशन मुनिगण। **देवता** - केशी। **छन्द** - अनुष्टुप्।

**केश्यग्निं केशी विषं केशी विभर्ति रोदसी।**
**केशी विश्वं स्वर्दृशे केशीदं ज्योतिरुच्यते ॥१॥**

रश्मिले प्रकाशमान सूर्यदेव अग्नि, जल र द्यावापृथिवी धारण गर्दछन्। सूर्यले नै सम्पूर्ण विश्वलाई प्रकाश दिएर दर्शनयोग्य बनाउँछन्। यिनै सूर्यका ज्योतिलाई केशी नामले सम्बोधन गरिन्छ।

**मुनयो वातरशनाः पिशङ्गा वसते मला।**
**वातस्यानु ध्राजिं यन्ति यद्देवासो अविक्षत ॥२॥**

वातरसनका वंशज मनीषि पहेँलो वस्त्र धारण गरेर तपस्या गर्दछन्। देवत्व धारण गर्ने स्थितिमा उनीहरू वायुका गतिको अनुगमन गर्दछन्।

**उन्मदिता मौनेयेन वातॉं आ तस्थिमा वयम्।**
**शरीरेदस्माकं यूयं मर्तासो अभि पश्यथ ॥३॥**

सबै सांसारिक व्यवहारबाट निवृत्त भएपछि मुनिको वृत्तिमा लागेर परम आनन्दमा मग्न हुँदै हामी वायुजस्तै सूक्ष्म भएका छौं। हे मानिस हो ! हाम्रो स्थूल शरीर मात्रै देख्न तिमीहरू सक्दछौ।

**अन्तरिक्षेण पतति विश्वा रूपावचाकशत्।**
**मुनिर्देवस्यदेवस्य सौकृत्याय सखा हितः ॥४॥**

मुनिहरू अन्तरिक्षमार्गबाट आउनजान सक्दछन्। उनीहरू सबै कुरो आफ्ना तेजस्वी दिव्यदृष्टिले हेर्न सक्छन्। तिमी देवशक्तिसित मित्रभावले युक्त छौ। तिनीहरू सबै सत्कर्मका लागि नै प्रतिष्ठित हुन्छन्।

**वातस्याश्वो वायोः सखाथो देवेषितो मुनिः।**
**उभौ समुद्रावा क्षेति यश्च पूर्व उतापरः ॥५॥**

मुनिहरू वायुमार्गमा भ्रमण गर्नका लागि अश्वरूप धारण गर्दछन् र वायुका सखाजस्तै छन्। देवताहरू उनलाई प्राप्त गर्ने कामना गर्दछन्। उनीहरू पूर्व र पश्चिमका दुवै समुद्रमा निवास गर्दछन्।

**अप्सरसां गन्धर्वाणां मृगाणां चरणे चरन्।**
**केशी केतस्य विद्वान्त्सखा स्वादुर्मदिन्तमः ॥६॥**

सूर्यदेव अप्सरा, गन्धर्व र अन्य मृग आदिका स्थानमा विचरण गर्दछ। तेजस्वी सूर्यदेव सबै ज्ञातव्य विषयका ज्ञाता, रसका उत्पादक र आनन्ददाता हुन्।

**वायुरस्मा उपामन्थत्पिनष्टि स्मा कुनन्नमा।**
**केशी विषस्य पात्रेण यद्रुद्रेणापिबत्सह ॥७॥**

केशीले रुद्रसँग जलपात्रमा जल पान गरिरहँदा वायुदेव उनलाई प्रकम्पित गर्दछन् र कठिन माध्यमिका वाणी भङ्ग गराउँछन्।

[सूक्त - १३७]

**ऋषि** - सप्तर्षिगण। **देवता** - विश्वेदेवा। **छन्द** - अनुष्टुप्।

**उत देवा अवहितं देवा उन्नयथा पुनः।**
**उतागश्चक्रुषं देवा देवा जीवयथा पुनः ॥१॥**

हे देवता हो ! हामी पतितलाई बारम्बार माथि उकास। हे देवता हो ! हामी अपराधीको अपराध कर्म निवारण गर। हे देवता हो ! हाम्रो संरक्षण गर्दै दीर्घायुसम्पन्न बनाओ।

द्वाविमौ वातौ वात आ सिन्धोरा परावतः ।
दक्षं ते अन्य आ वातु परान्यो वातु यद्रपः ॥२॥

दुई वायुमध्ये एउटा समुद्रसम्म र अर्को समुद्रभन्दा परसम्म प्रवाहित हुन्छन्। दुईमध्ये एउटाले स्तोतालाई बल प्रदान गरुन् भने अर्काले उनका पाप नाश गराऊन्।

आ वात वाहि भेषजं वि वात वाहि यद्रपः ।
त्वं हि विश्वभेषजो देवानां दूत ईयसे ॥३॥

हे वायुदेव ! तिमी व्याधि निवारण गर्दछौ र कल्याणकारी औषधि लिएर आउँछौ। अहितकारी पापरूपी मललाई यहाँबाट उडाउँदै लिएर जाऊ। तिमी संसारका लागि औषधिको रूप, कल्याणकारी र देवदूत बनेर सर्वत्र सञ्चार गर्दछौ।

आ त्वागमं शन्तातिभिरथो अरिष्टतातिभिः ।
दक्षं ते भद्रमाभार्षं परा यक्ष्मं सुवामि ते ॥४॥

हे स्तोता हो ! तिम्रा लागि सुखशान्ति प्रदायक र अहिंसक संरक्षणसाधन लिएर म आएको छु। तिम्रा लागि मङ्गलमय शक्ति पनि मैले धारण गरेको छु। त्यसैले त यति बेला तिमीहरूका सबै खालको रोग निवारण गर्दछु।

त्रायन्तामिह देवास्त्रायतां मरुतां गणः ।
त्रायन्तां विश्वा भूतानि यथायमरपा असत् ॥५॥

यस लोकमा समस्त देवताले हामीलाई संरक्षण प्रदान गरुन्। मरुत्‌हरू र सबै खालका प्राणीले हाम्रो रक्षा गरुन्। तिनले हाम्रा शरीरको रोग र पाप निवारण गरुन्।

आप इद्वा उ भेषजीरापो अमीवचातनीः ।
आपः सर्वस्य भेषजीस्तास्ते कृण्वन्तु भेषजम् ॥६॥

जल सम्पूर्ण रोगको निवारक हो। जलले नै रोगका कारणको विनाश गर्दछ। जल नै सबैका लागि हितकारी औषधि हो। त्यही नै तिम्रा लागि रोगनाशक छ।

हस्ताभ्यां दशशाखाभ्यां जिह्वा वाचः पुरोगवी ।
अनामयित्नुभ्यां त्वा ताभ्यां त्वोप स्पृशामसि ॥७॥

मन्त्रको उच्चारण गर्दाखेरि वाणीसँगै जिब्रो चलेझैं दस औँला भएका दुवै हातले तिम्रो स्पर्श गर्दा रोगबाट मुक्त गरिदिन्छौं।

[सूक्त - १३८]

ऋषि - अङ्ग औरव। देवता - इन्द्र। छन्द - जगती।

तव त्य इन्द्र सख्येषु वह्नय ऋतं मन्वाना व्यदर्दिरुर्वलम्।
यत्रा दशस्यन्नुषसो रिणन्नपः कुत्साय मन्मन्नह्यश्च दंसयः ॥१॥

हे इन्द्रदेव ! तिम्रो मित्रतामा रहने यज्ञकर्ताले हवनसामग्री समर्पित गर्दै यज्ञ सम्पन्न गरेर बल नामको असुर संहार गर्नका लागि तिम्रो स्तोत्र गाए। अनि तिमीले कुत्स ऋषिलाई बिहानीका आलोक दर्शन गरायौ। तिमीले जल मुक्त गरायौ र वृत्रासुरका समस्त कार्य विनाश गर्‍यौ।

अवासृजः प्रस्वः श्वञ्चयो गिरीनुदाज उस्रा अपिबो मधु प्रियम्।
अवर्धयो वनिनो अस्य दंससा शुशोच सूर्य ऋतजातया गिरा ॥२॥

हे इन्द्रदेव ! तिमीले जल निर्माण गरेपछि पर्वत भेदन गरेर बगायौ। बल असुरले अपहरण गरेका गाई तिमीले मुक्त गरायौ। तिमीले मधुर सोमरस पान गरेर वनका वृक्ष वर्षाले संवर्द्धित गरायौ। यज्ञमा उत्तम मन्त्रले तिम्रो स्तुति गरियो। हे इन्द्रदेव ! तिम्रा असल कर्मको प्रभावबाट सूर्यदेवले तेज धारण गरे।

वि सूर्यो मध्ये अमुचद्रथं दिवो विदद्दासाय प्रतिमानमार्यः ।
दृळहानि पिप्रोरसुरस्य मायिन इन्द्रो व्यास्यच्चकृवाँ ऋजिश्वना ॥३॥

द्युलोकमा सूर्यदेवले आफ्नो रथ अघि बढाए। श्रेष्ठ इन्द्रदेवले दासलाई पराजित गरे। इन्द्रदेवले ऋजिश्वासँग मित्रता गरेर पिप्रु नामका मायावी असुरको पराक्रम नष्ट गरे।

अनाधृष्यानि धृषितो व्यास्यन्निधींरदेवाँ अमृणदयास्यः ।
मासेव सूर्यो वसु पुर्यमा ददे गृणानः शत्रूँरशृणाद्विरुक्मता ॥४॥

पराक्रमी इन्द्रदेवले अपराजेय शत्रुको सैन्यदल विनाश गरे। अयास्य ऋषिले स्तुति गरेका इन्द्रदेवले शक्तिशाली देवताविरोधी राक्षसलाई विनाश गरे। सूर्यदेवले भूमिबाट रस प्राप्त गरेझैं इन्द्रदेव शत्रुको नगरबाट धन ग्रहण गर्दछन्। स्तुति ग्रहण गर्दै उनले तेजस्वी वज्रले शत्रु विध्वंस गराए।

अयुद्धसेनो विभ्वा विभिन्दता दाशद्वृत्रहा तुज्यानि तेजते।
इन्द्रस्य वज्रादबिभेदभिश्नथः प्राक्रामच्छुन्ध्यूरजहादुषा अनः ॥५॥

इन्द्रदेवका सेनासित युद्ध गर्न कसैले पनि सक्दैन। ती सर्वज्ञ गतिशील र शत्रु विदीर्ण गर्ने वज्रले वृत्रको संहार गर्दछन्। चिरा पार्ने वज्रदेखि शत्रुपक्षका सबै डराउँछन्। त्यसै बेला सूर्यदेव विश्वलाई प्रकाशित गर्दछन् र उषादेवी रथ अघि बढाउँछिन्।

एता त्या ते श्रुत्यानि केवला यदेक एकमकृणोरयज्ञम्।
मासां विधानमदधा अधि द्यवि त्वया विभिन्नं भरति प्रधिं पिता ॥६॥

हे इन्द्रदेव ! यी पराक्रमी कार्य तिमीबाटै सम्पन्न भएका छन्। यज्ञविरोधी असुर तिमीले एक्लै संहार गर्‍यौ। महिना निर्धारण गर्ने सूर्यदेवलाई तिमीले नै द्युलोकमा प्रतिष्ठित गरायौ। वृत्रासुरले भङ्ग गरेका रथको चक्र सबैका पिताजस्ता सूर्यदेव तिम्रै शक्तिले धारण गर्दछन्।

[सूक्त - १३९]

**ऋषि** – विश्वावसु देवगन्धर्व। **देवता** – सविता विश्वावसु देवगन्धर्व। **छन्द** – त्रिष्टुप्।

सूर्यरश्मिर्हरिकेशः पुरस्तात्सविता ज्योतिरुदयाँ अजस्रम्।
तस्य पूषा प्रसवे याति विद्वान्त्सम्पश्यन्विश्वा भुवनानि गोपाः ॥१॥

हरियो रङ्गका वनस्पति र यसमा आश्रित सबै जीवलाई पोषण गर्ने परम ज्योतिर्वान् सूर्यदेव आफ्नो रश्मि पूर्व दिशामा प्रकट गर्दछन्। जितेन्द्रिय विद्वान् र पोषणकर्ता सूर्यदेव उत्पन्न भएर सम्पूर्ण लोकलाई प्रकाशित गर्दछन् र निरन्तर गतिशील हुन्छन्।

नृचक्षा एष दिवो मध्य आस्त आपप्रिवान् रोदसी अन्तरिक्षम्।
स विश्वाचीरभि चष्टे घृतचीरन्तरा पूर्वमपरं च केतुम् ॥२॥

सबैलाई उत्पन्न गराउने सवितादेव द्युलोकका मध्यमा अवस्थित छन्। यिनले द्युलोक, पृथ्वी र अन्तरिक्ष तीनैलाई आफ्ना तेजले दीप्तिमान् गराउँछन्। यी सम्पूर्ण विश्वलाई आफ्नो आश्रयमा लिने, जल धारण गर्ने र सबैले स्पष्ट देख्ने हुन्। यो लोक, परलोक र मध्यलोकमा रहेका प्राणीको सूक्ष्म भाव सवितादेवले राम्रोसित जानेका छन्।

रायो बुध्नः सङ्गमनो वसूनां विश्वा रूपाभि चष्टे शचीभिः।
देवइव सविता सत्यधर्मेन्द्रो न तस्थौ समरे धनानाम् ॥३॥

ऐश्वर्यका मूल, वैभवप्रदाता, सत्यधर्मका प्रेरक सवितादेव आफ्ना दीप्तिले समस्त विश्व आलोकित गर्दछन्। सवितादेव इन्द्रदेवको जस्तै सम्पदा प्राप्त गर्न सङ्ग्राम क्षेत्रमा स्थिर रहन्छन्।

विश्वावसुं सोम गन्धर्वमापो ददृशुषीस्तदृतेना व्यायन्।
तदन्ववैदिन्द्रो रारहाण आसां परि सूर्यस्य परिधींरपश्यत् ॥४॥

हे सोमदेव ! यज्ञकर्मका पुण्य प्रभावले विश्वावसु गन्धर्व देखेर विलक्षणतापूर्वक जल प्रवाहित भयो। जललाई प्रेरणा दिने इन्द्रदेवले यो प्रवाह देखेपछि यो यज्ञकार्य कहाँ चल्दै छ भन्ने हेर्नका लागि सूर्यमण्डलका चारैतिर निरीक्षण गरे।

विश्वावसुरभि तन्नो गृणातु दिव्यो गन्धर्वो रजसो विमानः।
यद्वा घा सत्यमुत यन्न विद्म धियो हिन्वानो धिय इन्नो अव्याः ॥५॥

दिव्यलोकनिवासी र जल निर्माण गर्ने गन्धर्व विश्वावसुले हामीलाई यस विषयमा सम्पूर्ण जानकारी दिऊन्। यथार्थ सत्य के हो, हामी जान्दैनौं। हे विश्ववसु हो ! हाम्रो स्तुतिलाई प्रेरित गर्दै तिमी विचारपूर्वक गरेका कामलाई संरक्षण प्रदान गर।

सस्निमविन्दच्चरणे नदीनामपावृणोद्दुरो अश्मव्रजानाम्।
प्रासां गन्धर्वो अमृतानि वोचदिन्द्रो दक्षं परि जानादहीनाम् ॥६॥

इन्द्रदेवले नदीको अन्तिम भाग अन्तरिक्षका मेघमा देखे। उनले मेघमा सञ्चार गर्ने जलको ढोका उघारे। उनले यसलाई जलमय स्वरूप प्रदान गरे। इन्द्रदेवले मेघको शक्ति राम्ररी चिनेका छन्।

[सूक्त - १४०]

ऋषि - अग्नि। देवता - अग्नि। छन्द - सतोबृहती विष्टारपंक्ति त्रिष्टुप्।

**अग्ने तव श्रवो वयो महि भ्राजन्ते अर्चयो विभावसो।**
**बृहद्भानो शवसा वाजमुक्थ्यं दधासि दाशुषे कवे ॥१॥**

हे अग्निदेव ! तिम्रो हविष्यात्र प्रशंसनीय छ। हे तेजस्वी अग्निदेव ! तिम्रो ज्वाला अति सुशोभित हुन्छ। तेजस्वी, ज्ञानी हे देव ! तिमी आफ्ना सामर्थ्यले हविदातालाई उत्तम अन्न प्रदान गर्दछौ।

**पावकवर्चाः शुक्रवर्चा अनूनवर्चा उदियर्षि भानुना।**
**पुत्रो मातरा विचरन्नुपावसि पृणक्षि रोदसी उभे ॥२॥**

हे अग्निदेव ! पवित्र किरण र निर्मल तेजले युक्त तिमी सूर्यदेवजस्तै उदित हुन्छौ र पूर्ण तेज प्राप्त गर्दछौ। हविष्यान्नले द्युलोक र वर्षाले पृथ्व सुसम्पन्न बनाउँछौ।

**ऊर्जो नपाज्जातवेदः सुशस्तिभिर्मन्दस्व धीतिभिर्हितः।**
**त्वे इषः सं दधुर्भूरिवर्पसश्चित्रोतयो वामजाताः ॥३॥**

सर्वज्ञाता, शक्तिवान् हे अग्निदेव ! तिमी हाम्रा उत्तम स्तुतिले हर्षोल्लास प्राप्त गर, हाम्रा यज्ञ आदि कर्मले सन्तुष्ट होऊ। अनेकौं रूपका विलक्षण द्रष्टा तिमी यजमानले प्रदान गरेको हविष्यान्न ग्रहण गर।

**इरज्यन्नग्ने प्रथयस्व जन्तुभिरस्मे रायो अमर्त्य।**
**स दर्शतस्य वपुषो वि राजसि पृणक्षि सानसिं क्रतुम् ॥४॥**

हे अविनाशी अग्निदेव ! तिमी आफ्ना तेजले प्रदीप्त भएर हाम्रो धन वृद्धि गर। तिमी हाम्रा यज्ञकर्ममा आफ्ना तेजस्वी रूपले सुशोभित हुन्छौ र यज्ञको फल प्रदान गर्दछौ।

**इष्कर्तारमध्वरस्य प्रचेतसं क्षयन्तं राधसो महः।**
**रातिं वामस्य सुभगां महीमिषं दधासि सानसिं रयिम् ॥५॥**

संस्कारित र सुशोभित यज्ञ गराउने, सर्वज्ञ, असङ्ख्य धनका अधिपति, धनप्रदाता, हे अग्निदेव ! हामी तिम्रो आराधना गर्दछौं, मनग्गे धन र सौभाग्ययुक्त अन्न प्रदान गर।

**ऋतावानं महिषं विश्वदर्शतमग्निं सुम्नाय दधिरे पुरो जनाः।**
**श्रुत्कर्णं सप्रथस्तमं त्वा गिरा दैव्यं मानुषा युगा ॥६॥**

याजकहरू यज्ञका महान् आधार, सामर्थ्यवान्, सर्वज्ञ, दर्शनीय अग्निदेवलाई सुखको आकाङ्क्षाले आफ्ना सामु स्थापित गर्दछन्। हाम्रो स्तुति सुन्ने, सर्वत्र विख्यात, दिव्य गुणसम्पन्न हे अग्निदेव ! यजमान दम्पती आफ्ना वाणीले तिम्रो स्तुति गर्दछन्।

[सूक्त - १४१]

ऋषि - अग्नि तापस। देवता - विश्वेदेवा। छन्द - अनुष्टुप्।

**अग्ने अच्छा वदेह नः प्रत्यङ् नः सुमना भव।**
**प्र नो यच्छ विशस्पते धनदा असि नस्त्वम् ॥१॥**

हे अग्निदेव ! हामीप्रति तिमी श्रेष्ठ मनोभाव राखेर यज्ञमा उपस्थित होऊ र हाम्रा लागि हितकारी उपदेश देऊ। हे प्रजापालक अग्निदेव ! तिमी ऐश्वर्यप्रदाता हौ। त्यसैले हामीलाई पनि धनधान्यले परिपूर्ण गराऊ।

**प्र नो यच्छत्वर्यमा प्र भगः प्र बृहस्पतिः।**
**प्र देवाः प्रोत सूनृता रायो देवी ददातु नः ॥२॥**

अर्यमा, भग र बृहस्पतिदेवले हामीलाई ऐश्वर्यले परिपूर्ण गरुन्। समस्त देवता र वाणीकी अधिष्ठात्री, सत्यप्रिय देवी सरस्वतीले भरपूर धन आदि सम्पदा प्रदान गरुन्।

**सोमं राजानमवसेऽग्निं गीर्भिर्हवामहे।**
**आदित्यान्विष्णुं सूर्यं ब्रह्माणं च बृहस्पतिम् ॥३॥**

हामी आफ्नो संरक्षण र पालनका लागि राजा सोम, अग्निदेव, आदित्यगण, विष्णुदेव, सूर्यदेव, प्रजापति ब्रह्मा र बृहस्पतिदेवलाई स्तोत्रले आमन्त्रित गर्दछौं।

इन्द्रवायू बृहस्पतिं सुहवेह हवामहे।
यथा नः सर्व इज्जनः सङ्गत्यां सुमना असत् ॥४॥

प्रशंसनीय इन्द्र, वायु र बृहस्पतिलाई हामी यस यज्ञीय कार्यमा आदरपूर्वक आमन्त्रित गर्दछौं। यी सबै देवताहरू हामीप्रति अनुकूल विचार राख्दै हर्षित होऊन्।

अर्यमणं बृहस्पतिमिन्द्रं दानाय चोदय।
वातं विष्णुं सरस्वतीं सवितारं च वाजिनम् ॥५॥

हे स्तोता हो ! तिमीहरू सबैले अर्यमा, बृहस्पति, इन्द्र, वायु, विष्णु, सरस्वती, अन्न र बलप्रदाता सवितादेवलाई आह्वान गर। सबै देवता हामीलाई ऐश्वर्य प्रदान गर्नका लागि यहाँ आऊन्।

त्वं नो अग्ने अग्निभिर्ब्रह्म यज्ञं च वर्धय।
त्वं नो देवतातये रायो दानाय चोदय ॥६॥

हे अग्निदेव ! तिमी अन्य सबै अग्निसँगै आएर हाम्रो स्तोत्र र यज्ञ अभिवृद्धि गराऊ। तिमी धनवैभव प्रदान गर्नका लागि दाताका रूपमा देवतालाई प्रेरित गर।

[सूक्त - १४२]

ऋषि - शार्ङ्गगण। देवता - अग्नि। छन्द - त्रिष्टुप् जगती अनुष्टुप्।

अयमग्ने जरिता त्वे अभूदपि सहसः सूनो नह्यन्यदस्त्याप्यम्।
भद्रं हि शर्म त्रिवरूथमस्ति त आरे हिंसानामप दिद्युमा कृधि ॥१॥

हे अग्निदेव ! स्तोताहरू स्तोत्रले तिम्रै प्रार्थना गर्दछन्। हे बलका पुत्र अग्निदेव ! हाम्रा लागि तिमीबाहेक अर्को कुनै लक्ष्य पनि छैन। तिमीले दिएको कल्याणकारी सुख, निश्चित नै तीनै किसिमका दुःखबाट संरक्षण प्रदान गर्ने खालको छ। हामी तिम्रा प्रतप्त ज्वालाले पीडित नहोऔं भनेर तिनलाई हामीदेखि परै राख।

प्रवत्ते अग्ने जनिमा पितूयतः साचीव विश्वा भुवना न्यृञ्जसे।
प्र सप्तयः प्र सनिषन्त नो धियः पुरश्चरन्ति पशुपाइव त्मना ॥२॥

हे अग्निदेव ! अन्नको अभिलाषा गर्दै भएको तिम्रो उत्पत्ति अति मनोहर हुन्छ। बन्धुले जस्तै तिमी सम्पूर्ण लोक सुशोभित गराउँछौ। जताततै जाने ज्वाला देखेर हाम्रो स्तोत्रको उदय भएको छ। यी ज्वाला पशुपालकजस्तै अगाडि बढ्दछन्।

उत वा उ परि वृणक्षि बप्सद्बहोरग्न उलपस्य स्वधावः।
उत खिल्या उर्वराणां भवन्ति मा ते हेतिं तविषीं चुक्रुधाम ॥३॥

हे दीप्तिमान् अग्निदेव ! घाँसलाई खाएझैं डढाएर समाप्त गर्दछौ। उब्जाउ भूमिलाई तिम्रा प्रभावले रुखो गराउँछ। हामी तिम्रो प्रचण्ड ज्वालाको कोपभाजन नबनौं।

यदुद्वतो निवतो यासि बप्सत्पृथगेषि प्रगर्धिनीव सेना।
यदा ते वातो अनुवाति शोचिर्वप्तेव श्मश्रु वपसि प्र भूम ॥४॥

हे अग्निदेव तिमी माथिदेखि तलसम्म रुख डढाउँदै विजयको आकाङ्क्षा बोकेका सेना अलगअलग दिशामा गएझैं अगाडि बढ्दछौ। तिम्रा ज्वालाको अनुकूल दिशामा वायु बहँदा हजामले दाह्रीजुँगा खौरेझैं विशाल भूखण्डका वृक्षवनस्पति रित्याउँछौ।

प्रत्यस्य श्रेषणे ददृश्र एकं नियानं बहवो रथासः।
बाहू यदग्ने अनुमर्मृजानो न्यङ्ङुत्तानामन्वेषि भूमिम् ॥५॥

हे अग्निदेव ! तिमी आफ्नो ज्वाला वारम्बार विस्तृत गर्दै समस्त वनक्षेत्र भस्म पारेर कहिले तल त कहिले माथिका भूभागमा सर्छौ। तिम्रा शरीरको ज्वाला शृङ्खलाबद्ध भएर सेनाको एउटा रथका पछाडि अर्को रथ हिँडेझैं अगाडि बढ्दछ।

उत्ते शुष्मा जिहतामुत्ते अर्चिरुत्ते अग्ने शशमानस्य वाजाः।
उच्छ्वञ्चस्व नि नम वर्धमान आ त्वाद्य विश्वे वसवः सदन्तु ॥६॥

हे अग्निदेव ! तिम्रो ज्वाला माथितिर उक्लियोस्। तिम्रा तेज र बलपराक्रम बढोस्। आज सबै वसुहरू अति नै नम्र भएर तिम्रो वन्दना गर्दछन्।

अपामिदं न्ययनं समुद्रस्य निवेशनम्।
अन्यं कृणुष्वेतः पन्थां तेन याहि वशाँ अनु ॥७॥

हे अग्निदेव ! जलको आधार यस स्थानमा विशाल समुद्र विद्यमान छ। तिमी हाम्रा यस स्थानका अतिरिक्त अन्य मार्ग अपनाऊ। अनि तिमी स्वेच्छापूर्वक वनस्पतितर्फ अगाडि बढ्न सक्दछौ।

आयने ते परायणे दूर्वा रोहन्तु पुष्पिणीः।
ह्रदाश्च पुण्डरीकाणि समुद्रस्य गृहा इमे ॥८॥

हे अग्निदेव ! तिमी आउँदा र जाँदा हाम्रा निवासस्थानमा फूलले भरिएका लहरा र दुबो हुर्किर्योस्। जलाशयमा अनेकौं किसिमका कमल फुलून्। समुद्रको जलप्रदेशमा हाम्रो यो निवासस्थल होस्। त्यहाँ हामी तिम्रो तापदेखि सुरक्षित रहन सकौं।

[सूक्त - १४३]

ऋषि - अत्रि सांख्य। देवता - आश्विनीकुमार। छन्द - अनुष्टुप्।

त्यं चिदत्रिमृतजुरमर्थमश्वं न यातवे।
कक्षीवन्तं यदी पुना रथं न कृणुथो नवम् ॥१॥

हे अश्विनीकुमार हो ! यज्ञ आदि गर्दागर्दै अत्रि ऋषि वृद्ध भइसकेका थिए। तिमीहरूले उनलाई बलवान् बनाएपछि अश्वजस्तै गन्तव्य स्थलमा पुग्न समर्थ भए। कक्षीवान् ऋषिलाई तिमीले पुरानो रथ मरम्मत गरेझैं नवजीवन प्रदान गर्‍यौ।

त्यं चिदश्वं न वाजिनमरेणवो यमत्नत।
दृळ्हं ग्रन्थिं न वि ष्यतमत्रिं यविष्ठमा रजः ॥२॥

हे अश्विनीकुमार हो ! शीघ्रगामी अश्वजस्तै अत्रि ऋषिलाई अति पराक्रमी असुरले बाँधेका थिए। तिमीहरूले कसिलो गाँठो खोलेझैं गरी उनलाई मुक्ति प्रदान गर्‍यौ। उनी युवा पुरुषजस्तो भएर यस लोकमा आए।

नरा दंसिष्ठावत्रये शुभ्रा सिषासतं धियः।
अथा हि वां दिवो नरा पुनः स्तोमो न विशसे ॥३॥

शुभ्रवर्ण र सुन्दर नायक हे अश्विनीकुमार हो ! तिमीहरू अत्रि ऋषिलाई कार्यकुशलता प्राप्त गर्नका लागि बुद्धि प्रदान गर। हामी दिव्य स्तोत्रले तिमीहरूको प्रार्थना गर्दछौं।

चिते तद्वां सुराधसा रातिः सुमतिरश्विना।
आ यन्नः सदने पृथौ समने पर्षथो नरा ॥४॥

श्रेष्ठ अन्नदाता हे अश्विनीकुमार हो ! हाम्रा यज्ञगृहमा उपस्थित भएर तिमीहरूले महान् यज्ञको रक्षा गर्‍यौ। यसबाट निश्चित रूपमा तिमीहरू हाम्रा दानको भावना र स्तोत्रका अभिप्रायबाट परिचित छौ भन्ने हामी अनुभव गर्दछौं।

युवं भुज्युं समुद्र आ रजसः पार ईङ्खितम्।
यातमच्छा पतत्रिभिर्नासत्या सातये कृतम् ॥५॥

हे अश्विनीकुमार हो ! समुद्रका तरङ्गमा जतातते डुब्न लागेका भुज्युलाई उतार्नका लागि तिमीहरू दुवै श्रेष्ठ पतवार भएको नौका लिएर पुग्यौ र उनलाई बचाएर पुनः यज्ञको अनुष्ठान गर्न समर्थ गर्‍यौ।

आ वां सुम्नैः शंयूइव मंहिष्ठा विश्ववेदसा।
समस्मे भूषतं नरोत्सं न पिप्युषीरिषः ॥६॥

सर्वज्ञ नायकस्वरूप हे अश्विनीकुमार हो ! तिमीहरू राजाजस्तै सुखी र श्रेष्ठ पूजनीय छौ। हाम्रा नजिकै धन र ऐश्वर्यसँगै आओ। गाईका थुन दुधले भरिएझैं हामीलाई धन आदिले परिपूर्ण गराऊ।

[सूक्त - १४४]

ऋषि - सुपर्ण ताक्ष्र्य पुत्र। देवता - इन्द्र। छन्द - गायत्री बृहती विष्टार पंक्ति।

अयं हि ते अमर्त्य इन्दुरत्यो न पत्यते। दक्षो विश्वायुर्वेधसे ॥१॥

हे इन्द्रदेव ! तिमी सृष्टिका निर्माता हौ। अमृतस्वरूप बल वृद्धि गर्ने र जीवनको आधार यो सोमरस अश्वजस्तै भएर तिम्रा नजिक पुग्दछ।

अयमस्मासु काव्य ऋभुर्वज्रो दास्वते।
अयं बिभर्त्यूर्ध्वकृशनं मदमृभुर्न मदम् ॥२॥

दाता इन्द्रदेवको तेजस्वी वज्र हाम्रा स्तोत्रले वर्णन गर्नयोग्य छ। उनी यसैले ऊर्ध्वकृशन नामका ऋषि अथवा ऊर्ध्वरेता साधकको रक्षा गर्दथे। ऋभुदेव यज्ञकर्ताका संरक्षक भएझैं इन्द्रदेव पनि यजमानलाई प्रोत्साहित गर्दै पोषण प्रदान गर्दछन्।

घृषुः श्येनाय कृत्वन आसु स्वासु वंसगः। अव दीधेदहीशुवः ॥३॥

तेजस्वी इन्द्रदेव यजमानरूपी प्रजाका लागि अति प्रशंसनीय छन्। उनी कर्मशील श्येन ऋषिका निम्ति उनका सन्तानलाई तेज प्रदान गरुन्।

यं सुपर्णः परावतः श्येनस्य पुत्र आभरत्। शतचक्रं योऽह्यो वर्तनिः ॥४॥

तार्क्ष्यका पुत्र सुपर्ण श्येनले ऐश्वर्यप्रदाता सोमदेवलाई अति टाढाबाट लिएर आए। सोमले वृत्र वधका लागि इन्द्रदेवलाई प्रोत्साहित गर्दछन्।

यं ते श्येनश्चारुमवृकं पदाभरदरुणं मानमन्धसः।
एना वयो वि तार्यायुर्जीवस एना जागार बन्धुता ॥५॥

हे इन्द्रदेव ! सुन्दर रातो वर्णको अन्न उत्पादन गर्ने र सुखप्रद सोम श्येनका खुट्टाले च्यापेर ल्याए। हामीलाई यसैले तिमी अन्न र आयु प्रदान गर। सोमले हाम्रो मैत्री भावना जागृत गर।

एवा तदिन्द्र इन्दुना देवेषु चिद्धारयाते महि त्यजः।
क्रत्वा वयो वि तार्यायुः सुक्रतो क्रत्वायमस्मदा सुतः ॥६॥

सोमरस पान गरेर इन्द्रदेव महान् बल र दुःख निवारक संरक्षण सामर्थ्यले हाम्रो रक्षा गर्दछन्। हे शुभ्र कर्मशील इन्द्रदेव ! हाम्रा यज्ञ आदि कर्मले आनन्दित भएर अन्न र दीर्घायु प्रदान गर। यो सोमरस तिम्रा लागि नै पेलेर तयार गरिएको हो।

[सूक्त - १४५]

ऋषि - इन्द्राणी। देवता - सपत्नी बाधन। छन्द - अनुष्टुप् पंक्ति।

इमां खनाम्योषधिं वीरुधं बलवत्तमाम्।
यया सपत्नीं बाधते यया संविन्दते पतिम् ॥१॥

लहरारूपी बलशाली औषधि हामी खनेर निकाल्दछौं। यसैबाट सौतालाई दुःख दिएर स्वामीको असाधारण प्रेम पाइन्छ।

उत्तानपर्णे सुभगे देवजूते सहस्वति।
सपत्नीं मे परा धम पतिं मे केवलं कुरु ॥२॥

हे औषधि ! तिम्रा पात माथि फैलन्छन्। तिमी स्वामीका लागि उत्तम सौभाग्ययुक्त छौ। तिमी देवताबाट निर्मित हौ। तिम्रो तेज अत्यन्त प्रखर छ। तिमी मेरी सौता हटाऊ। तिमी मेरा स्वामीलाई मेरै लागि मात्र प्रेम गर्ने बनाइदेऊ।

उत्तराहमुत्तर उत्तरेदुत्तराभ्यः। अधा सपत्नी या ममाधरा साधराभ्यः ॥३॥

हे अति उत्तम औषधि ! हामी उत्कृष्ट बनौं, श्रेष्ठमा अति श्रेष्ठता उपलब्ध गरौं। सौता निकृष्टमा पनि अति निकृष्ट स्थितिमा पुगून्।

नह्यस्या नाम गृभ्णामि नो अस्मिन्रमते जने।
परामेव परावतं सपत्नीं गमयामसि ॥४॥

म इन्द्राणी सौताको नाम पनि सुन्न उचित ठान्दिनँ। सौता सबैका लागि अप्रिय हुन्छन्। सौतालाई म टाढैबाट पर पुऱ्याउन चाहन्छु।

अहमस्मि सहमानाथ त्वमसि सासहिः।
उभे सहस्वती भूत्वी सपत्नीं मे सहावहै ॥५॥

हे औषधि ! म तिम्रा सहयोगले सौता पराजित गराउँछु। तिमी पनि यस कार्यमा समर्थ छौ। हामी दुवै शक्तिले सम्पन्न बनेर सौतालाई शक्तिहीन बनाऔं।

उप तेऽधां सहमानामभि त्वाधां सहीयसा।
मामनु प्र ते मनो वत्सं गौरिव धावतु पथा वारिव धावतु ॥६॥

हे पतिदेव ! म तिम्रो शिर राख्ने सिरानीका नजिकै सौतालाई पराजित गराउने औषधि राख्दछु। पराजित गराउने औषधिका प्रभावले बाछातिर गाई कुदेझैं वा ओरालोतिर पानी बगेझैं तिम्रो मन मतिर आकर्षित होस्।

[सूक्त – १४६]

ऋषि – देवमुनि ऐरंमद। देवता – अरण्यानी। छन्द – अनुष्टुप्।

अरण्यान्यरण्यान्यसौ या प्रेव नश्यसि।
कथा ग्रामं न पृच्छसि न त्वा भीरिव विन्दतीँ३॥१॥

हे वनदेवी ! तिमी जङ्गलमा हेर्दाहेर्दै बिलाउँछ्यौ तर गाउन जाने मार्ग किन सोध्दिनौ ? निर्जन वनमा नै किन बस्दछ्यौ ? तिमीलाई एक्लै बस्न किन डर नलागेको ?

वृषारवाय वतदे यदुपावति चिच्चिकः।
आघाटिभिरिव धावयन्नरण्यानिर्महीयते॥२॥

कुनै प्राणी साँढे डुक्रिएभैँ कराउँछन् अनि कुनैले चीँचीँ गर्दै मानौँ उत्तर दिन्छन्। त्यस बेला तिनीहरू मानौँ वीणाको जस्तै ध्वनि गर्दै वनकी देवीको गुणगान गर्दछन्।

उत गावइवादन्त्युत वेश्मेव दृश्यते।
उतो अरण्यानिः सायं शकटीरिव सर्जति॥३॥

यस वनमा कतै गाई चर्दै भएभैँ लाग्दछ भने कतै लहरा भाडीको घर देखिन्छ। साँझपख घाँसदाउरा लिएर गाडा निस्कँदा अरण्यदेवीले घरतिर पठाएभैँ लाग्दछ।

गामङ्गैष आ ह्वयति दार्वङ्गैषो अपावधीत्।
वसन्नरण्यान्यां सायमक्रुक्षदिति मन्यते॥४॥

हे अरण्यदेवी ! एउटा मानिस गाई बोलाइरहेको छ भने अर्को काठ काटिरहेको छ। वनमा बस्ने मानिस राती विभिन्न खालका शब्द सुनेर डराउँछन्।

न वा अरण्यानिर्हन्त्यन्यश्चेन्नाभिगच्छति।
स्वादोः फलस्य जग्ध्वाय यथाकामं नि पद्यते॥५॥

अरण्यकी अधिष्ठात्री देवी अरण्यानीले कुनै प्राणीको हिंसा गर्दिनन्। अरू बाघ आदिले उनीमाथि आक्रमण गर्दैनन्। वनमा मधुर स्वादिष्ट फलफूल खाएर स्वेच्छापूर्वक निवास गर्न सक्छिन्।

आञ्जनगन्धिं सुरभिं बह्वन्नामकृषीवलाम्।
प्राहं मृगाणां मातरमरण्यानिमशंसिषम्॥६॥

मृगको नाभीमा भएको कस्तुरी आदि उत्तम सुगन्धले युक्त, प्रचुर फलफूल आदि भक्ष्य पदार्थले परिपूर्ण कृषि कार्य नगर्ने र हरिणका माउको रूपमा रहने अरण्यानी देवीको हामी स्तुति गर्दछौँ।

[सूक्त – १४७]

ऋषि – सुवेदस शैरीष। देवता – इन्द्र। छन्द – जगती त्रिष्टुप्।

श्रत्ते दधामि प्रथमाय मन्यवेऽहन्यद्वृत्रं नर्यं विवेरपः।
उभे यत्त्वा भवतो रोदसी अनु रेजते शुष्मात्पृथिवी चिदद्रिवः॥१॥

हे हातमा वज्र लिएका इन्द्रदेव ! दुष्ट संहार गर्ने, प्राणीका हितकारी, जल प्रवाहित गर्ने, द्युलोक र पृथ्वीलाई आफ्ना इच्छाले गतिशील गराउने, तिम्रा जोसप्रति हामी याजकहरू श्रद्धा व्यक्त गर्दछौँ।

त्वं मायाभिरनवद्य मायिनं श्रवस्यता मनसा वृत्रमर्दयः।
त्वामिन्नरो वृणते गविष्टिषु त्वां विश्वासु हव्यास्विष्टिषु॥२॥

हे प्रशंसनीय इन्द्रदेव ! तिमी अन्न उत्पन्न गर्ने इच्छा गर्दै बुद्धिका कुशलताले मायावी वृत्रासुरलाई पीडित गर्दछौ। हामी गाई उपलब्ध गर्न तिम्रै प्रार्थना गर्दछौँ। हवि समर्पित गर्न योग्य तिमीलाई सबै यज्ञमा मानिसले आह्वान गर्दछन्।

ऐषु चाकन्धि पुरुहूत सूरिषु वृधासो ये मघवन्नानशुर्मघम्।
अर्चन्ति तोकेक तनये परिष्टिषु मेधसाता वाजिनमह्रये धने॥३॥

अनेकौँ स्तोताले आह्वान गर्ने.. ऐश्वर्यशाली हे इन्द्रदेव ! याजकहरू तिम्रा कृपाले वाञ्छित धन पाएर उन्नति गर्दछन्। शक्तिशाली अन्नदाता हे इन्द्रदेव ! उनीहरू पुत्रपौत्रादिले सम्पन्न उत्तम हितकारी वैभव प्राप्त गर्नका लागि नै पूजा गर्दछन्।

स इन्नु रायः सुभृतस्य चाकनन्मदं यो अस्य रंह्यं चिकेतति।
त्वावृधो मघवन्दाश्वध्वरो मक्षू स वाजं भरते धना नृभिः॥४॥

तेजस्वी इन्द्रदेवको सक्रियता र आनन्द सोमरसले बढाउँछ। यो कुरो जान्नेहरू नै मन लागेका

ऐश्वर्यका लागि प्रार्थना गर्दछन्। हे ऐश्वर्यवान् इन्द्रदेव ! तिमी यज्ञ आदि कर्म सम्पन्न गर्ने जुन यजमानको ऐश्वर्य वृद्धि गराउँछौ, उनीहरू चाँडै धनधान्य र सेवकले परिपूर्ण वैभव प्राप्त गर्दछन्।

**त्वं शर्धाय महिना गृणान उरु कृधि मघवञ्छग्धि रायः।**
**त्वं नो मित्रो वरुणो न मायी पित्वो न दस्म दयसे विभक्ता ॥५॥**

हे इन्द्रदेव ! महिमामय स्तवनले प्रार्थना गरिँदा हामीलाई तिमी विशाल बलले सम्पन्न बनाऊ। हे ऐश्वर्यपति दर्शनीय इन्द्रदेव ! हामीलाई तिमी विविध प्रकारका ऐश्वर्य प्रदान गर। तिमी मित्र र वरुणदेवको जस्तै सर्वश्रेष्ठ ज्ञानले सम्पन्न छौ। हामीलाई तिमी धनधान्य प्रदान गर।

[सूक्त - १४८]

ऋषि - पृथुवैन्य। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

**सुष्वाणास इन्द्र स्तुमसि त्वा ससवांसश्च तुविनृम्ण वाजम्।**
**आ नो भर सुवितं यस्य चाकन्त्मना तना सनुयाम त्वोताः ॥१॥**

हे इन्द्रदेव ! हामी सोम र अन्न आदि हव्य समर्पित गर्दै तिमीलाई प्रार्थना गर्दछौँ। तिम्रा इच्छाको अनुकूल सम्पदा हामीलाई प्रदान गर। तिम्रा कृपाले हामी आफ्ना परिश्रमबाट उत्तम सम्पदाका अधिकारी बनौँ।

**ऋष्वस्त्वमिन्द्र शूर जातो दासीर्विशः सूर्येण सह्याः।**
**गुहा हितं गुह्यं गूळ्हमप्सु बिभृमसि प्रस्रवणे न सोमम् ॥२॥**

दर्शनीय र शूरवीर हे इन्द्रदेव ! सूर्यका रूपमा तिमी असुरका प्रजा उत्पन्न हुनासाथ पराजित गर्दछौ। गुफामा लुकेर बसेका अथवा जलमा गुप्त रीतिले विद्यमान शत्रु पनि तिमी पराजित गर्दछौ। जलको वर्षा हुँदा हामी तिम्रा लागि सोमयाग सम्पन्न गर्दछौँ।

**अर्यो वा गिरो अभ्यर्च विद्वानृषीणां विप्रः सुमतिं चकानः।**
**ते स्याम ये रणयन्त सोमैरेनोत तुभ्यं रथोळ्ह भक्षैः ॥३॥**

हे इन्द्रदेव ! तिमी मन्त्रद्रष्टा ऋषिका श्रेष्ठ स्तोत्रका अभिलाषी ज्ञाता र सर्वेश्वर भएर स्तुति स्वीकार गर। सोमरस समर्पित गरेर हामीले तिम्रा स्नेहको भावनालाई पूजा गरेका छौँ। त्यसैले हामी तिम्रा आत्मीय हौ। हे रथमा आरुढ भएका इन्द्रदेव ! श्रेष्ठ हव्य पदार्थसँगै स्तोत्र पनि हामी तिम्रा निमित्त समर्पित गर्दछौँ।

**इमा ब्रह्मेन्द्र तुभ्यं शंसि दा नृभ्यो नृणां शूर शवः।**
**तेभिर्भव सक्रतुर्येषु चाकन्नुत त्रायस्व गृणत उत स्तीन् ॥४॥**

हे इन्द्रदेव ! सबै श्रेष्ठ स्तोत्र तिम्रा लागि नै प्रस्तुत गरिएका हुन्। हे वीर इन्द्रदेव ! मानिसमा सर्वश्रेष्ठलाई तिमी शक्ति प्रदान गर। तिमीसित प्रेमको कामना गर्ने स्तोता तिम्रा लागि यज्ञ आदि कर्म सम्पन्न गर्दछन्। सङ्गठित भएर स्तोत्र पाठ गर्नेलाई तिमी संरक्षण प्रदान गर।

**श्रुधी हवमिन्द्र शूर पृथ्या उत स्तवसे वेन्यस्यार्कैः।**
**आ यस्ते योनिं घृतवन्तमस्वारूर्मिर्न निम्नैर्द्रवयन्त वक्वाः ॥५॥**

हे शूरवीर इन्द्रदेव ! पृथुका आह्वानमाथि ध्यान देऊ। वेनका पुत्र पृथुले वेदमन्त्रले तिम्रो अर्चना गर्दछन्। घिउरूपी हव्ययुक्त भएर यज्ञको अनुष्ठान गर्दै तिम्रो स्तुतिगान गर्ने स्तोतालाई स्वीकार गर। तिनीहरू सबै ओरालोतिर जाने पानीको भलझैँ तिमीतिर शीघ्र आइपुगून्।

[सूक्त - १४९]

ऋषि - अर्चन् हैरण्यस्तूप। देवता - सविता। छन्द - त्रिष्टुप्।

**सविता यन्त्रैः पृथिवीमरम्णादस्कम्भने सविता द्यामदृंहत्।**
**अश्वमिवाधुक्षद्धुनिमन्तरिक्षमतूर्ते बद्धं सविता समुद्रम् ॥१॥**

सृष्टिका उत्पादक सवितादेव आफ्ना नियन्त्रण साधनले पृथ्वी सुस्थिर पार्दछन्। आधार र स्तम्भ बिनै द्युलोक बलियो रूपमा अन्तरिक्षमा स्थापित गर्दछन्। सवितादेव आधाररहित नै अन्तरिक्षमा रहेको जलराशिका रूपमा अडिएका छन्। अश्वको जस्तै कम्पायमान शरीर भएका मेघबाट जलको वर्षा गराउँछन्।

यत्रा समुद्रः स्कभितो व्यौनदपां नपात्सविता तस्य वेद।
अतो भूरत आ उत्थितं रजोऽतो द्यावापृथिवी अप्रथेताम् ॥२॥

जल धारण गरेका हे अग्निदेव ! अन्तरिक्षमा विद्यमान रहँदै मेघले पृथ्वी सेचन गर्दछ। त्यस स्थानसित सवितादेव परिचित छन्। सवितादेवबाटै पृथ्वी, अन्तरिक्ष र द्युलोक विस्तृत भएका छन्।

पश्चेदमन्यदभवद्यजत्रममर्त्यस्य भुवनस्य भूना।
सुपर्णो अङ्ग सवितुर्गरुत्मान्पूर्वो जातः स उ अस्यानु धर्म ॥३॥

अविनाशी, अमर सोमले देवताका लागि यज्ञ सम्पन्न गरिन्छ। ती सबै सवितादेवभन्दा पछि उत्पन्न भएका हुन्। सवितादेवबाट सबैभन्दा पहिले सुपर्ण चरोरूपी सूर्य उत्पन्न भए। सवितादेवको धारणशक्तिका आधारमा नै उनले प्रतिष्ठा प्राप्त गरेका छन्।

गावइव ग्रामं यूयुधिरिवाश्वान्वाश्रेव वत्सं सुमना दुहाना।
पतिरिव जायामभि नो न्येतु धर्ता दिवः सविता विश्ववारः ॥४॥

वनमा चर्ने गाई घरतिर, योद्धाहरू युद्धका समयमा घोडातिर, भर्खर ब्याएको गाई दुध खुवाउन लैनो बाछातिर र पति पत्नीतिर स्वाभाविक रूपले हतारिएर गएझैं स्वर्ग धारण गर्ने, सबै तिरबाट प्रार्थन गरिने सवितादेव हामी याजककहाँ आइपुग्दछन्।

हिरण्यस्तूपः सवितर्यथा त्वाङ्गिरसो जुह्वे वाजे अस्मिन्।
एवा त्वार्चन्नवसे वन्दमानः सोमस्येवांशुं प्रति जागराहम् ॥५॥

हे सवितादेव ! हाम्रा पिता अङ्गिराका पुत्र हिरण्यस्तूपले अन्न प्राप्तिका लागि गरेका यज्ञमा तिमीलाई आह्वान गरेझैं हामी तिम्रो वन्दना गर्दै सेवा समर्पित गर्दछौं। सोमलताको संरक्षणका लागि यजमान यज्ञको समाप्तिसम्म उत्साहपूर्वक खटेझैं गरी हामी तिम्रो सेवामा संलग्न रहन्छौं।

[सूक्त - १५०]

**ऋषि** - मृडीक वासिष्ठ। **देवता** - अग्नी। **छन्द** - बृहती उपरिष्टाज्ज्योति।

समिद्धश्चित्समिध्यसे देवेभ्यो हव्यवाहन।
आदित्यै रुद्रैर्वसुभिर्न आ गहि मृडीकाय न आ गहि ॥१॥

हे हव्यवाहक अग्निदेव ! देवताका निमित्त तिमीलाई प्रदीप्त गराएका छौं। तिमी हाम्रा यज्ञको अनुष्ठानमा आदित्यगण, रुद्रगण र वसुगणसँग कल्याणका लागि आऊ।

इमं यज्ञमिदं वचो जुजुषाण उपागहि।
मर्तासस्त्वा समिधान हवामहे मृडीकाय हवामहे ॥२॥

हे अग्निदेव ! तिमी यस यज्ञलाई प्रेमपूर्वक सेवन गर्दै हाम्रा प्रार्थना स्वीकार गर र यहाँ प्रतिष्ठित होऊ। हे तेजस्वी अग्निदेव ! हामी सबै मानिस यज्ञको सफलता र आफ्ना सुखको संवर्द्धनका लागि तिमीलाई आह्वान गर्दछौं।

त्वामु जातवेदसं विश्ववारं गृणे धिया।
अग्ने देवाँ आ वह नः प्रियव्रतान्मृडीकाय प्रियव्रतान् ॥३॥

हे अग्निदेव ! तिमी सबैलाई धारण गर्ने र सबै उत्पन्न पदार्थका ज्ञाता हौ। हामी उत्तम स्तोत्रले तिम्रो प्रार्थना गर्दछौं। हाम्रो सुखका लागि तिमी श्रेष्ठ व्रतको नियम पालन गर्दै देवतालाई यस यज्ञमा लिएर आऊ।

अग्निर्देवो दोवनामभवत्पुरोहितोऽग्निं मनुष्याऽऋषयः समीधिरे।
अग्निं महो धनसातावहं हुवे मृडीकं धनसातये ॥४॥

दिव्य गुणले सम्पन्न हे अग्निदेव ! तिमी देवताका पुरोहित हौ। सबै मनस्वी र तत्त्वद्रष्टा ऋषिले तिमीलाई प्रदीप्त गराएका हुन्। प्रचुर ऐश्वर्य सम्पदा प्राप्त गर्न हामी तिम्रो आह्वान गर्दछौं। कल्याणकारी सुख प्राप्तिका लागि हामी तिम्रि प्रार्थना गर्दछौं।

अग्निरत्रिं भरद्वाजं गविष्ठिरं प्रावन्नः कण्वं त्रसदस्युमाहवे।
अग्निं वसिष्ठो हवते पुरोहितो मृडीकाय पुरोहितः ॥५॥

सङ्ग्राम कालमा अग्निदेवले अत्रि, भरद्वाज, गविष्ठिर, कण्व र त्रसदस्यु आदि ऋषिलाई राम्ररी सुरक्षित गरेका थिए। पुरोहित वसिष्ठ अग्निदेवको आह्वान गर्दथे। उहिलेका मानिस सुख पाउनका लागि अग्निदेवकै उपासना गर्दथे।

[सूक्त - १५१]

ऋषि - श्रद्धा कामायनी। देवता - श्रद्धा। छन्द - अनुष्टुप्।

**श्रद्धयाग्निः समिध्यते श्रद्धया हूयते हविः।**
**श्रद्धां भगस्य मूर्धनि वचसा वेदयामसि ॥१॥**

श्रद्धाले यज्ञको अग्नि प्रज्वलित गर्न सकिन्छ र श्रद्धाले नै हविष्यान्नको आहुति समर्पित गर्न सकिन्छ। श्रद्धाले विभूतिको सर्वोच्च स्थान प्राप्त हुने कुरो स्पष्ट भन्न सकिन्छ।

**प्रियं श्रद्धे ददतः प्रियं श्रद्धे दिदासतः।**
**प्रियं भोजेषु यज्वस्विदं म उदितं कृधि ॥२॥**

हे श्रद्धा ! तिमी दान दिने विचारका दातालाई अभीष्ट फल प्रदान गर। हे श्रद्धा ! याजकलाई तिमी-हाम्रा यी कुराअनुसार इच्छित फल प्रदान गर।

**यथा देवा असुरेषु श्रद्धामुग्रेषु चक्रिरे।**
**एवं भोजेषु यज्वस्वस्माकमुदितं कृधि ॥३॥**

हे श्रद्धा ! इन्द्र आदि देवताले विचार गरेअनुसार बलवान् असुरको विनाश गरिदिएझैं हाम्रा याजकलाई तिमी अभीष्ट फल प्रदान गर।

**श्रद्धां देवा यजमाना वायुगोपा उपासते।**
**श्रद्धां हृदय्ययाकूत्या श्रद्धया विन्दते वसु ॥४॥**

देवता र याजक मानिस वायुदेवका संरक्षणमा श्रद्धाको उपासना गर्दछन्। अन्तःकरणमा कुनै सङ्कल्प जागृत हुँदा उनीहरू श्रद्धाकै आश्रय लिन्छन्। श्रद्धाले नै मानिस धनवैभव आर्जन गर्दछ।

**श्रद्धां प्रातर्हवामहे श्रद्धां मध्यंदिनं परि।**
**श्रद्धां सूर्यस्य निम्रुचि श्रद्धे श्रद्धापयेह नः ॥५॥**

हामी प्रातःकाल श्रद्धाको आह्वान गर्दछौं। मध्याह्न कालमा श्रद्धाको आह्वान गर्दछौं। सूर्यास्त कालमा पनि श्रद्धाकै उपासना गर्दछौं। हे श्रद्धा ! हामी सबैलाई तिमी श्रद्धाले परिपूर्ण गर।

[सूक्त - १५२]

ऋषि - आश भारद्वाज। देवता - इन्द्र। छन्द - अनुष्टुप्।

**शास इत्था महाँ अस्यमित्रखादो अद्भुतः।**
**न यस्य हन्यते सखा न जीयते कदा चन ॥१॥**

हे महान् इन्द्रदेव ! तिम्रो शत्रु मार्ने क्षमता महान् र अद्भुत छ। तिम्रा मित्रको कहिल्यै मृत्यु हुँदैन र कहिल्यै शत्रुबाट पराजित पनि हुँदैनन् भनेर शास ऋषि प्रार्थना गर्दछन्।

**स्वस्तिदा विशस्पतिर्वृत्रहा विमृधो वशी।**
**वृषेन्द्रः पुर एतु नः सोमपा अभयङ्करः ॥२॥**

इन्द्रदेव सबैको कल्याण गर्ने, प्रजापालन गर्ने, वृत्रासुर विनाश गर्ने, युद्धकर्ता शत्रु वशमा गर्ने, साधकको कामना पूरा गर्ने, सोमपान गर्ने र अभय दान गर्ने हुन्। उनी हामीकहाँ आऊन्।

**वि रक्षो वि मृधो जहि वि वृत्रस्य हनू रुज।**
**वि मन्युमिन्द्र वृत्रहन्नमित्रस्याभिदासतः ॥३॥**

हे इन्द्रदेव ! राक्षस विनाश गरेर हिंसक दुष्ट नाश गर। वृत्रासुरको मुख भत्काऊ। हे शत्रुनाशक इन्द्रदेव ! तिमी हाम्रो संहारक शत्रुजस्तो क्रोध र घमन्ड नष्ट गर।

**वि न इन्द्र मृधो जहि नीचा यच्छ पृतन्यतः।**
**यो अस्माँ अभिदासत्यधरं गमया तमः ॥४॥**

हे इन्द्रदेव ! तिमी हाम्रो शत्रु विनाश गर। हाम्रा सेनासित पराजित शत्रुलाई मुख लुकाउँदै भाग्ने बनाऊ। हामीलाई वशमा पार्ने मन भएका शत्रु खाडलमा हालिदेऊ।

**अपेन्द्र द्विषतो मनोऽप जिज्यासतो वधम्।**
**वि मन्योः शर्म यच्छ वरीयो यवया वधम् ॥५॥**

हे इन्द्रदेव ! शत्रुको दुष्ट मन विनाश गर। हाम्रो संहार गर्ने विचारका शत्रु नष्ट गर। शत्रुका रिसबाट रक्षा गर्दै हामीलाई श्रेष्ठ सुख प्रदान गर र शत्रुबाट आउने मृत्यु रोक।

[सूक्त - १५३]

**ऋषि** - इन्द्र । **देवता** - इन्द्र । **छन्द** - गायत्री ।

**ईङ्खयन्तीरपस्युव इन्द्रं जातमुपासते । भेजानासः सुवीर्यम् ॥१॥**

इन्द्रदेवका नजिक पुगेर उनको सेवा गर्ने, यज्ञ आदि सत्कर्म गर्नमा लागेका माताहरूले उनैको उपासना अर्चना गर्दछन् । उनीबाट सुखकारी श्रेष्ठ धन उपलब्ध गराउँछन् ।

**त्वमिन्द्र बलादधि सहसो जात ओजसः । त्वं वृषन्वृषेदसि ॥२॥**

हे बलवर्द्धक इन्द्रदेव ! तिमी शत्रु पराजित गर्ने सामर्थ्य र धैर्यले प्रख्यात छौ । तिमी सबैभन्दा सामर्थ्यशाली र साधकको कामना पूरा गर्ने हौ ।

**त्वमिन्द्रासि वृत्रहा व्य१न्तरिक्षमतिरः । उद् द्यामस्तभ्ना ओजसा ॥३॥**

हे इन्द्रदेव ! तिमी वृत्रहन्ता र अन्तरिक्ष विस्तार गर्ने हौ । तिम्रा सामर्थ्यले द्युलोकलाई स्थायित्व प्रदान गर्दछ ।

**त्वमिन्द्र सजोषसमर्कं बिभर्षि बाह्वोः । वज्रं शिशान ओजसा ॥४॥**

हे इन्द्रदेव आफ्ना कार्यमा सहयोगी सूर्यलाई तिमीले दुवै हातले अन्तरिक्षमा स्थापित गरेका छौ । तिमी आफ्ना सामर्थ्यले वज्रास्त्र तीक्ष्ण गराउँछौ ।

**त्वमिन्द्राभिभूरसि विश्वा जातान्योजसा । स विश्वा भुव आभवः ॥५॥**

हे इन्द्रदेव ! तिमी आफ्ना शक्तिले सबै प्राणीलाई वशीभूत गराउँछौ । समस्त स्थानमा तिम्रो प्रभुत्व छ ।

[सूक्त - १५४]

**ऋषि** - यमी वैवस्वती । **देवता** - भाववृत्त । **छन्द** - अनुष्टुप् ।

**सोम एकेभ्यः पवते घृतमेक उपासते ।**
**येभ्यो मधु प्रधावति ताँश्चिदेवापि गच्छतात् ॥१॥**

कुनै पितृका लागि सोमरस उपलब्ध रहन्छ र कोही घिउको आहुति सेवन गर्दछन् । हे प्रेतात्मा ! जसका लागि मधुर रसको धारा प्रवाहित हुन्छ, तिमी उनैकहाँ पुग ।

**तपसा ये अनाधृष्यास्तपसा ये स्वर्ययुः ।**
**तपो ये चक्रिरे महस्ताँश्चिदेवापि गच्छतात् ॥२॥**

तपस्याका प्रभावले कुनै पनि किसिमको पराजय हुन सक्दैन र तपस्याका कारणले स्वर्ग प्राप्त हुन्छ । जसले कठिन तपस्या सम्पन्न गरेका छन्, हे प्रेतात्मा ! तिमी उनैका नजिक जाऊ ।

**ये युध्यन्ते प्रधनेषु शूरासो ये तनूत्यजः ।**
**ये वा सहस्रदक्षिणास्ताँश्चिदेवापि गच्छतात् ॥३॥**

हे प्रेतात्मा ! सङ्ग्राममा आफ्ना प्राणको आहुति दिएर वीरगति प्राप्त भएका अथवा अनेकौं किसिमका दान दिएर आफ्नो कीर्ति यस संसारमा अमर गराएका शूरवीर छन् । हे प्रेतात्मा ! तिमी उनैका नजिक जाऊ ।

**ये चित्पूर्व ऋतसाप ऋतावान ऋतावृधः ।**
**पितॄन्तपस्वतो यम ताँश्चिदेवापि गच्छतात् ॥४॥**

हे प्रेतात्मा ! हाम्रा सधैं सत्यको रक्षा गरेका, नियमित रूपले यज्ञ आदि सत्कर्ममा लागिरहेका र तपोबलका धनी पूर्वज पितृका नजिकै तिमी जाऊ ।

**सहस्रणीथाः कवयो ये गोपायन्ति सूर्यम् ।**
**ऋषीन्तपस्वतो यम तपोजाँ अपि गच्छतात् ॥५॥**

हे प्रेतात्मा ! जीवनका हजारौं श्रेष्ठ विधाको विकास गर्ने, सूर्यका शक्तिका संरक्षक र तपबाट उत्पन्न भएर तपस्वी जीवन बिताउने हाम्रा पुर्खा मनीषी पितृका नजिक जाऊ ।

[सूक्त - १५५]

**ऋषि** - शिरिम्बिठ भारद्वाज । **देवता** - अलक्ष्मीघ्न विश्वेदेवा । **छन्द** - अनुष्टुप् ।

**अरायि काणे विकटे गिरिं गच्छ सदान्वे ।**
**शिरिम्बिठस्य सत्वभिस्तेभिष्ट्वा चातयामसि ॥१॥**

हे अलक्ष्मी ! तिमी सधैं दानको विरोध गर्दै कुत्सित शब्द उच्चारण गर्दछ्यौ । विकृत आकृति

भएकी तिमी सधैँ रिसाउँछ्यौ, मानिस नभएका ठाउँतिर जाऊ। अन्तरिक्षलाई भेदन गर्ने मेघका बलले तिमीलाई विनाश गर्नेछन्।

**चत्तो इतश्चत्तामुतः सर्वा भ्रूणान्यारुषी।**
**आराय्यं ब्रह्मणस्पते तीक्ष्णशृङ्गोदृषन्निहि ॥२॥**

अलच्छिनले वृक्ष, लता, शस्य आदिको अङ्कुर विनाश गरेर दुर्भिक्ष उत्पन्न गर्दछ। त्यसलाई यस लोक र उस लोकबाट हामी पर हटाउँछौं। हे तेजस्वी ब्रह्मणस्पतिदेव ! दानविरोधिनी ती धननाशक देवीलाई तिमी यहाँबाट पर हटाऊ।

**अदो यद्दारु प्लवते सिन्धोः पारे अपूरुषत्।**
**तदा रभस्व दुर्हणो तेन गच्छ परस्तरम् ॥३॥**

विकृत आकृति भएकी हे अलक्ष्मी ! तिमी त्यो संरक्षणविना आफैं समुद्रका किनारबाट बग्दै गरेका काठमाथि बसेर समुद्रको पल्लो किनारमा जाऊ।

**यद्ध प्राचीरजगन्तोरो मण्डूरधाणिकीः।**
**हता इन्द्रस्य शत्रवः सर्वे बुद्बुदयाशवः ॥४॥**

हिंसक र कुत्सित शब्द बोल्ने हे अलक्ष्मी ! तिमी यहाँ आउँदा वीर इन्द्रदेवका सबै शत्रु, पानीको फिँजका फोकाझैं विनाश हुन्छन्।

**परीमे गामनेषत पर्यग्निमहृषत। देवेष्वक्रत श्रवः क इमाँ आ दधर्षति ॥५॥**

सबै देवताले गाईको उद्धार गरे। उनले अग्निदेवलाई विभिन्न स्थानमा प्रतिष्ठित गरे र देवताका लागि हविष्यान्न प्रदान गरे। यिनीमाथि आक्रमण गर्ने कसको सामर्थ्य छ र ?

[सूक्त - १५६]

**ऋषि** - केतु आग्नेय। **देवता** - अग्नि। **छन्द** - गायत्री।

**अग्निं हिन्वन्तु नो धियः सप्तिमाशुमिवाजिषु। तेन जेष्म धनन्धनम् ॥१॥**

हाम्रा स्तुतिले अग्निदेवलाई युद्धमा शीघ्र चल्ने घोडालाई प्रेरित गरेझैं यज्ञको प्रेरणा दिऊन्। जीवन सङ्ग्राममा हामी सबै ऐश्वर्यका विजेता होऔं।

**यया गा आकरामहे सेनयाग्ने तवोत्या। तां नो हिन्व मघत्तये ॥२॥**

हे अग्निदेव ! तिम्रो विघ्नबाधा निवारण गर्ने र संरक्षण प्रदान गर्ने शक्तिले हामीलाई जसरी ज्ञान प्राप्त हुन्छ, उसै गरी हाम्रा लागि उत्तम धन पनि प्रदान गर।

**आग्ने स्थूरं रयिं भर पृथुं गोमन्तमश्विनम्। अङ्धि खं वर्तया पणिम् ॥३॥**

हे अग्निदेव ! स्वस्थ र महान् गाई एवं अश्वसहितको प्रचुर धन हामीलाई प्रदान गर। आकाश तिम्रै तेजले प्रकाशित छ। तिमी व्यापारीलाई पनि मार्गदर्शन गराऊ।

**अग्ने नक्षत्रमजरमा सूर्यं रोहयो दिवि। दधज्ज्योतिर्जनेभ्यः ॥४॥**

हे अग्निदेव ! सबै वस्तु प्रकाशित गराउने, नबुझ्ने र निरन्तर गतिशील सूर्यदेवलाई तिमीले अन्तरिक्षमा स्थापित गरेका छौ।

**अग्ने केतुर्विशामसि प्रेष्ठः श्रेष्ठ उपस्थसत्। बोधा स्तोत्रे वयो दधत् ॥५॥**

हे अग्निदेव ! ध्वजाजस्तो भएर तिमी प्रजालाई ज्ञान दिने, प्रिय सर्वश्रेष्ठ छौ। तिमी यज्ञशालामा रहेर हाम्रो स्तुति गान स्वीकार गर्दै श्रेष्ठ पोषण प्रदान गर।

[सूक्त - १५७]

**ऋषि** - भुवन आप्त्य। **देवता** - विश्वेदेवा। **छन्द** - द्विपदा त्रिष्टुप्।

**इमा नु कं भुवना सीषधामेन्द्रश्च विश्वे च देवाः ॥१॥**

हामी चाँडै सबैलोक प्राप्त गरौं। इन्द्रदेव र अरु सबै देवता हाम्रा लागि सुखशान्ति प्राप्त गर्नमा सहायक होऊन्।

**यज्ञं च नस्तन्वं च प्रजां चादित्यैरिन्द्रः सह चीक्लृपाति ॥२॥**

इन्द्रदेव र आदित्यले हाम्रो यज्ञ सफल पारुन्, शरीर निरोगी बनाऊन् र हाम्रा सन्तानाई सद्व्यवहारमा प्रेरित गरुन्।

आदित्यैरिन्द्रः सगणे मरुद्भिरस्माकं भूत्वविता तनूनाम् ॥३॥
आदित्य र मरुत्हरूसँग इन्द्रदेव आएर हाम्रा शरीरलाई सुरक्षा प्रदान गरुन्।

हत्वाय देवा असुरान्यदायन्देवा देवत्वमभिरक्षमाणाः ॥४॥
देवगणले वृत्र आदि असुर संहार गरेर आआफ्ना स्थानतर्फ फर्कंदै गरेका बेला अमर देवत्वको सुरक्षा हुन सक्यो।

प्रत्यञ्चमर्कमनयञ्छचीभिरादित्स्वधामिषिरां पर्यपश्यन् ॥५॥
स्तोताले इन्द्र आदि देवताका निम्ति ठूला यज्ञ आदि कर्मले युक्त स्तुति प्रस्तुत गरे। त्यसपछि सबैले अन्तरिक्षबाट बर्सँदै गरेको जल देखे।

[सूक्त - १५८]

ऋषि - चक्षु सौर्य। देवता - सूर्य। छन्द - गायत्री।

सूर्यो नो दिवस्पातु वातो अन्तरिक्षात्। अग्निर्नः पार्थिवेभ्यः ॥१॥
सबैलाई प्रेरणा प्रदान गर्ने सूर्यदेव द्युलोकका अनिष्टबाट हाम्रो रक्षा गरुन्। अन्तरिक्षका अनिष्टबाट हामीलाई बचाऊन् र अग्निदेवले हामीलाई पृथ्वीको माथिल्लो भागमा रहेका शत्रुबाट जोगाऊन्।

जोषा सवितर्यस्य ते हरः शतं सवाँ अर्हति। पाहि नो दिद्युतः पतन्त्याः ॥२॥
सयौं किसिमले यजनीय तेज भएका सवितादेवले हाम्रो स्तुति स्वीकार गरुन् र शत्रुका चम्किला हतियारबाट हामीलाई जोगाऊन्।

चक्षुर्नो देवः सविता चक्षुर्न उत पर्वतः। चक्षुर्धाता दधातु नः ॥३॥
सबैलाई प्रेरणा दिने सवितादेव हाम्रा आँखामा राम्रो ज्योति प्रदान गरुन्, पर्वतले तेजस्वी नेत्र प्रदान गरुन् र विधाताले हामीलाई ज्योतिसम्पन्न नेत्र प्रदान गरुन्।

चक्षुर्नो धेहि चक्षुषे चक्षुर्विख्यै तनूभ्यः। सं चेदं वि च पश्येम ॥४॥
हे सूर्यदेव ! हाम्रा नेत्रमा सम्पूर्ण पदार्थलाई राम्ररी हेर्न सक्ने ज्योति प्रदान गर। हामी तिम्रा तेजले यो संसार विभिन्न किसिमले राम्रो देख्न सकौं।

सुसन्दृशं त्वा वयं प्रति पश्येम सूर्य। वि पश्येम नृचक्षसः ॥५॥
हे सूर्यदेव ! हामी तिम्रो दर्शन गर्न सकौं। मानिसले जेजति देख्न सक्दछन्, त्यसलाई हामी विशिष्ट रूपमा देख्न सकौं।

[सूक्त - १५९]

ऋषि - शची पौलोमी। देवता - शची पौलोमी। छन्द - अनुष्टुप्।

उदसौ सूर्यो अगादुदयं मामको भगः।
अहं तद्विद्वला पतिमभ्यसाक्षि विषासहिः ॥१॥
द्युलोकमा रहेका सूर्यदेवको उदय मेरा लागि सौभाग्यजस्तै हो। उनका शक्तिले नै मैले आफ्ना स्वामीलाई वशमा राखेर सौतालाई पराजित गरें।

अहं केतुरहं मूर्धाहमुग्रा विवाचनी।
ममेदनु क्रतुं पतिः सेहानाया उपाचरेत् ॥२॥
म नै ध्वजाजस्तै ज्ञानयुक्त र शिरजस्तै प्रमुख हुँ। उग्र भए स्वामीलाई मधुर वचन बोल्न सहमत गराउँछु। मलाई सर्वोत्तम ठानेर स्वामीले मेरो कार्य सधैं समर्थन गर्दछन्।

मम पुत्राः शत्रुहणोऽथो मे दुहिता विराट्।
उताहमस्मि सञ्जया पत्यौ मे श्लोक उत्तमः ॥३॥
मेरो पुत्र शत्रु नाश गर्न सक्ने होस् र मेरा कन्या सबैभन्दा राम्रो रूप रङ्गले सुशोभित होऊन्। म सबैमाथि विजय प्राप्त गर्छु। स्वामी पनि मेरा यशको चर्चा गर्छन्।

येनेन्द्रो हविषा कृत्व्यभवद् द्युम्न्युत्तमः।
इदं तदक्रि देवा असपत्ना किलाभुवम् ॥४॥
यज्ञले मेरा स्वामी इन्द्रदेव समर्थ र जगत्‌विख्यात भएका छन्। देवताका निमित्त यज्ञ अनुष्ठान मैले नै सम्पन्न गरें। अब मेरा सबै शत्रुरूपी सौता मासिए।

असपत्न सपत्नघ्नी जयन्त्यभिभूवरी।
आवृक्षमन्यासां वर्चो राधो अस्थेयसामिव ॥५॥

म सौताको विनाश गरेर उनीहरूमाथि विजय प्राप्त गर्दछु। अस्थिर व्यक्तिको तेज र ऐश्वर्यजस्तै म सबै सौताको तेज र धन विनाश गर्दछु।

समजैषमिमा अहं सपत्नीरभिभूवरी।
यथाहमस्य वीरस्य विराजानि जनस्य च ॥६॥

सबैलाई पराजित गर्न सक्षम म सबै सौतामाथि विजय प्राप्त गर्दछु। आफ्ना वीर स्वामी इन्द्रदेव र उनका आफन्तलाई पनि म आफ्ना अधिकारमा राख्दछु।

[सूक्त - १६०]

ऋषि - पूरण वैश्वामित्र। देवता - इन्द्र। छन्द - त्रिष्टुप्।

तीव्रस्याभिवयसो अस्य पाहि सर्वरथा वि हरी इह मुञ्च।
इन्द्र मा त्वा यजमानासो अन्ये नि रीरमन्तुभ्यमिमे सुतासः ॥१॥

हे इन्द्रदेव ! तिमी तीव्र प्रभाव भएको यो सोमरस सेवन गर। गतिशील रथमा जोडेका अश्व लिएर आऊ। अन्य यजमानले तिमीलाई खुसी पार्न सक्दैनन्। हामी तिमीलाई खुसी पार्नेछौँ। तिम्रा निम्ति यो सोमरस पेलेर तयार गरिएको छ।

तुभ्यं सुतास्तुभ्यमु सोत्वासस्त्वां गिरः श्वात्र्या आ ह्वयन्ति।
इन्द्रेदमद्य सवनं जुषाणो विश्वस्य विद्वाँ इह पाहि सोमम् ॥२॥

हे इन्द्रदेव तिम्रा निम्ति सोमरस तयार छ र पछि पनि हुनेछ। सबै स्तुतिले तिमीलाई आह्वान गर्दछन्। हे सर्वज्ञ इन्द्रदेव ! चाँडै हाम्रा यज्ञमा उपस्थित भएर सोमपान गर।

य उशता मनसा सोममस्मै सर्वहृदा देवकामः सुनोति।
न गा इन्द्रस्तस्य परा ददाति प्रशस्तमिच्चारुमस्मै कृणोति ॥३॥

निश्छल भावनाले स्नेह र श्रद्धाभक्तिपूर्वक सोमरस पेलेर तयार गर्ने साधकका गाई इन्द्रदेवले दुब्लाउन दिँदैनन्। तिनले असल र प्रशंसनीय ऐश्वर्य प्रदान गर्छन्।

अनुस्पष्टो भवत्येषो अस्य यो अस्मै रेवान्न सुनोति सोमम्।
निररत्नौ मघवा तं दधाति ब्रह्मद्विषो हन्त्यनानुदिष्टः ॥४॥

इन्द्रदेवका निम्ति सोमरस प्रस्तुत गर्ने धनी मानिसलाई प्रत्यक्ष लाभ हुन्छ। वैभवशाली इन्द्रदेवले उनका पाखुरा समातेर भयदेखि मुक्त गराउँदै संरक्षण प्रदान गर्दछन्। उत्तम कार्यसित द्वेष गर्नेलाई इन्द्रदेव तुरुन्त नष्ट गरिदिन्छन्।

अश्वायन्तो गव्यन्तो वाजयन्तो हवामहे त्वोपगन्तवा उ।
आभूषन्तस्ते सुमतौ नवायां वयमिन्द्र त्वा शुनं हुवेम ॥५॥

हे इन्द्रदेव ! अश्व, गाई र ऐश्वर्यका अभिलाषाले प्रेरित हामी तिम्रा सुखद आगमनको अपेक्षा गर्दछौँ। तिम्रा निम्ति नयाँ र असल स्तोत्र रचना गरेर तिमीलाई आह्वान गर्दछौँ।

[सूक्त - १६१]

ऋषि - यक्ष्मनाशन प्राजापत्य। देवता - इन्द्र राजयक्ष्मघ्न। छन्द - त्रिष्टुप् अनुष्टुप्।

मुञ्चामि त्वा हविषा जीवनाय कमज्ञातयक्ष्मादुत राजयक्ष्मात्।
ग्राहिर्जग्राह यदि वैतदेनं तस्या इन्द्राग्नी प्र मुमुक्तमेनम् ॥१॥

हे रोगी ! यज्ञका हवि आदि द्रव्यले हामी तिम्रो अज्ञात रोग र राजयक्ष्मा मुक्त पार्दछौँ। यस बेला कुनै पाप ग्रहले यस रोगीलाई दुःख दियो भने त्यसबाट इन्द्रदेव र अग्निदेवले मुक्ति प्रदान गरुन्।

यदि क्षितायुर्यदि वा परेतो यदि मृत्योरन्तिकं नीत एव।
तमा हरामि निर्ऋतेरुपस्थादस्पार्षमेनं शतशारदाय ॥२॥

रोगीको आयु सकियो, ऊ यस लोकबाट जानेछ र ऊ मृत्युका नजिक पुगेको छ भने पनि उसलाई मृत्युदेव निर्ऋतिबाट फिर्ता ल्याउन सकिन्छ। मैले त्यसलाई छोएको छु, त्यसो हुँदा ऊ सय वर्षसम्म जीवित रहन्छ।

सहस्राक्षेण शतशारदेन शतायुषा हविषहार्षमेनम्।
शतं यथेमं शरदो नयातीन्द्रो विश्वस्य दुरितस्य पारम् ॥३॥

हामीले प्रदान गरेको आहुतिका हजार आँखाले सय वर्षको लामो जीवन दिन्छ। आहुतिले रोगीको जीवन थाम्दछ। सम्पूर्ण दुःख मेटाएर इन्द्रदेवले दीर्घायु प्रदान गरुन्।

शतं जीव शरदो वर्धमानः शतं हेमन्ताञ्छतमु वसन्तान्।
शतमिन्द्राग्नी सविता बृहस्पतिः शतायुषा हविषेमं पुनर्दुः ॥४॥

हे रोगमुक्त प्राणी ! निरन्तर बढिरहने तिमी सय वटा शरद, सय वटा हेमन्त र सय वटा वसन्त सुखपूर्वक बाँच। इन्द्रदेव, अग्निदेव, सवितादेव र बृहस्पतिदेव हविष्यान्नद्वारा सन्तुष्ट भएर तिमीलाई सय वर्षसम्मका लागि जीवनशक्ति प्रदान गरुन्।

आहार्षं त्वाविदं त्वा पुनरागाः पुनर्नव।
सर्वाङ्ग सर्वं ते चक्षुः सर्वमायुश्च तेऽविदम् ॥५॥

हे रोगी मानिस ! तिमीलाई हामीले मृत्युपाशबाट फिर्ता ल्याएका छौँ। पुनः नयाँ जीवन पाएका मानिस ! हामी तिम्रा नजिक फेरि आयौँ। हे सर्वाङ्ग स्वस्थ मानिस ! तिम्रा लागि सम्पूर्ण विश्व हेर्न सक्ने आँखा र आयु हामीले उपलब्ध गरायौँ।

## [सूक्त - १६२]

**ऋषि** - रक्षोहा ब्राह्म। **देवता** - गर्भसंस्राव प्रायश्चित्त। **छन्द** - अनुष्टुप्।

ब्रह्मणाग्निः संविदानो रक्षोहा बाधतामितः।
अमीवा यस्ते गर्भं दुर्णामा योनिमाशये ॥१॥

हाम्रा स्तोत्रले प्रसन्न भएर अग्निदेवले शरीरका सबै बाधा निवारण गरुन्। हे नारी ! तिम्रा शरीरमा रोगको विकार देखिने वा नदेखिने गरी छ भने अग्निदेवले हटाऊन्।

यस्ते गर्भममीवा दुर्णामा योनिमाशये।
अग्निष्टं ब्रह्मणा सह निष्क्रव्यादमनीनशत् ॥२॥

हे नारी ! तिमीलाई सताउने र तिम्रो सिर्जन र धारण गर्ने क्षमता गर्ने रोगरूपी आसुरी प्रवृत्ति अग्निदेवले नाश गराऊन् भनी हामी उनको स्तुति गरौँ।

यस्ते हन्ति पतयन्तं निषत्स्नुं यः सरीसृपम्।
जातं यस्ते जिघांसति तमितो नाशयामसि ॥३॥

हे स्त्री ! विभिन्न रोगका रूपमा जुनसुकै पैशाचिक शक्तिले तिम्रा गर्भलाई दुःख दिन खोज्छ। त्यसले तिम्रा सन्तान पिर्दछ भने ती सबै तिमीबाट पर पुऱ्याएर नाश गरौँ।

यस्त ऊरू विहरत्यन्तरा दम्पती शये।
योनिं यो अन्तरारेढि तमितो नाशयामसि ॥४॥

हे नारी ! थाहा पाएर वा नपाईकन तिम्रा शरीरमा पसेका र तिम्रा सन्तानलाई दुःख दिन खोज्ने जुनसुकै विकृतिलाई अग्निदेवका सहायताले हामी विनाश गरौँ।

यस्त्वा भ्रता पतिर्भूत्वा जारो भूत्वा निपद्यते।
प्रजां यस्ते जिघांसति तमितो नाशयामसि ॥५॥

हे स्त्री ! तिमीसित दाजुभाइका रूपमा, पतिका रूपमा वा प्रेमीका रूपमा आएर तिम्रा सन्तान नाश गर्ने छल गर्न लागेका रोगलाई हामी यहाँबाट टाढा पुऱ्याइदिन्छौँ।

यस्त्वा स्वप्नेन तमसा मोहयित्वा निपद्यते।
प्रजां यस्तो जिघांसति तमितो नाशयामसि ॥६॥

हे नारी ! स्वप्न अवस्थामा र निदाएका बेला तिमीलाई मोहमा पारेर नजिकिँदै आएर तिम्रा सन्तान नाश गर्ने विचारमा लागेका रोगलाई हामी टाढा पुऱ्याउँछौँ।

## [सूक्त - १६३]

**ऋषि** - विवृहा काश्यप। **देवता** - यक्ष्मनाशन। **छन्द** - अनुष्टुप्।

अक्षीभ्यां ते नासिकाभ्यां कर्णाभ्यां छुबुकादधि।
यक्ष्मं शीर्षण्यं मस्तिष्काज्जिह्वाया वि वृहामि ते ॥१॥

हे रोगी ! तिम्रा दुवै आँखा, दुवै कान, दुवै नाकका प्वाल, चिउँडो, टाउको मस्तिष्क र जिब्राबाट हामी यक्ष्मा रोग हटाइदिन्छौँ।

ग्रीवाभ्यस्त उष्णिहाभ्यः कीकसाभ्यो अनूक्यात्।
यक्ष्मं दोषण्य१मंसाभ्यां बाहुभ्यां विहामि ते ॥२॥

हे रोगी ! तिम्रा गर्धन, नाडी, माथिल्ला ओठ, स्नायु, हाडजोर्नी, काँध, पाखुरा र भित्री भागबाट यक्ष्मा रोग मेटाइदिन्छौं।

आन्त्रेभ्यस्ते गुदाभ्यो वनिष्ठोर्हृदयादधि।
यक्ष्मं मतस्नाभ्यां यक्नः प्लाशिभ्यो वि वृहामि ते ॥३॥

तिम्रो आँत, गुदा, नसा, हृदय, मूत्राशय, यकृत र अन्य पाचन प्रणलीका अवयवको रोग निवारण गर्दछौं।

ऊरुभ्यां ते अष्ठीवद्भ्यां पार्ष्णिभ्यां प्रपदाभ्याम्।
यक्ष्मं श्रोणिभ्यां भासदाद्भंससो वि वृहामि ते ॥४॥

हे रोगी तिम्रा दुवै तिघ्रा, पिंडौला, घुँडा, कुर्कुच्च, पैताला, हत्केला, नितम्ब, कम्मर र गुदाबाट हामी यक्ष्मा रोग निवारण गर्छौं।

मेहनाद्वनंकरणाल्लोमभ्यस्ते नखेभ्यः।
यक्ष्मं सर्वस्मादात्मनस्तमिदं वि वृहामि ते ॥५॥

तिम्रा नङ, रौं, प्रजनन अङ्गबाट र समस्त शरीरबाट हामी रोग हटाइदिन्छौं।

अङ्गादङ्गाल्लोम्नोलोम्नो जातं पर्वणिपर्वणि।
यक्ष्मं सर्वस्मादात्मनस्तमिदं वि वृहामि ते ॥६॥

प्रत्येक अङ्ग, प्रत्येक रौं र शरीरका जोर्नीमा रहेका रोगका गुँडबाट रोग हटाउँछौं।

[सूक्त – १६४]

ऋषि – प्रचेता आङ्गिरस। देवता – दुःस्वप्ननाशन। छन्द – अनुष्टुप् त्रिष्टुप् पंक्ति।

अपेहि मनसस्पतेऽप क्राम परश्चर।
परो निर्ऋत्या आ चक्ष्व बहुधा जीवतो मनः ॥१॥

हे दुःस्वप्न ! तिमीले हाम्रो मन आफ्ना अधीनमा पारेका छौ। तिमी यहाँबाट पर भाग, पर कुनै देशमा गएर आफूखुसी विचरण गर। निर्ऋति देवता यहाँबाट टाढै रहन्छन्, उनीसित गएर जीवित व्यक्तिका मनको रहर विशाल गराइदेऊ भन। त्यसै गरी मनको रहर मास्ने दुःस्वप्न नामको मानसिक अस्वस्थता विनाश गरिदेऊ।

भद्रं वै वरं वृणते भद्रं युञ्जन्ति दक्षिणम्।
भद्रं वैवस्वते चक्षुर्बहुत्रा जीवतो मनः ॥२॥

मानिसले असल फलकै आशा गरेको हुन्छ। मानिस असल फलकै रहर गर्ने हो। विवस्वतका पुत्र यमबाट हामी शुभदृष्टिको कामना गर्दछौं। हाम्रो मन विभिन्न खालका असल कुरामा रमाउने होस्।

यदाशसा निः शसाभिशसोपारिम जाग्रतो यत्स्वपन्तः।
अग्निर्विश्वान्यप दुष्कृतान्यजुष्टान्यारेअस्मद्दधातु ॥३॥

निराश भएका वेला, आशा सफल बनाउँदा, जागा अवस्थामा र निद्रामा हामीबाट हुने सबै पापकर्म र कष्टदायक कर्मको फल अग्निदेवले हामीबाट पर पारिदिऊन्।

यदिन्द्र ब्रह्मणस्पतेऽभिद्रोहं चरामसि।
प्रचेता न आङ्गिरसो द्विषतां पात्वंहसः ॥४॥

हे इन्द्रदेव र ब्रह्मणस्पतिदेव ! हामीबाट स्वप्न अवस्थामा तिमीप्रति कुनै पापकर्म भएमा क्षमा गर। अङ्गिराका पुत्र प्रचेताले पापजन्य अमङ्गलबाट हाम्रो रक्षा गरुन्।

अजैष्माद्यासनाम चाभूमानागसो वयम्।
जाग्रत्स्वप्नः सङ्कल्पः पापो यं द्विष्मस्तं स ऋच्छतु यो नो द्वेष्टि तमृच्छतु ॥५॥

आज हामी विजयी भएपछि प्राप्त गर्नुपर्ने वैभव उपलब्ध गर्दै निरपराध भएका छौं। जागा र निद्रा अवस्था वा मनको सोचाइसम्बन्धी गरेका सबै पाप द्वेष गर्ने शत्रुलाई प्राप्त होऊन्। हामी जोसित विद्वेष गर्दछौं, सबै पाप उनीहरूतिर जाऊन्।

[सूक्त - १६५]

ऋषि - कपोत नैर्ऋत। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

**देवाः कपोत इषितो यदिच्छन्दूतो निर्ऋत्या इदमाजगाम।**
**तस्मा अर्चाम कृणवाम निष्कृतिं शं नो अस्तु द्विपदे शं चतुष्पदे ॥१॥**

हे देवता हो ! निर्ऋतदेवको दूत यो मलेवा दुःख दिने विचारले हाम्रा घरमा आएको छ। त्यो बाधा निवारणका लागि हामी देवतालाई हविले अर्चना गर्दछौं। हामी हविले पाप हटाउँछौं। हाम्रा छोरानाति र गाई, अश्व आदिले सुखशान्ति पाऊन्।

**शिवः कपोत इषितो नो अस्त्वनागा देवाः शकुनो गृहेषु।**
**अग्निर्हि विप्रो जुषतां हविर्नः परि हेतिः पक्षिणी नो वृणक्तु ॥२॥**

हे देवताहरू हो ! हाम्रा घरमा आएको कपोत कल्याणकारी र निष्पाप होस्। ज्ञानवान् र आत्मीय अग्निदेवले हाम्रो हवि सेवन गरुन्। उनैका कृपादृष्टिले यो पँखेटा भएको पक्षी हामीबाट टाढै रहोस्।

**हेतिः पक्षिणी न दभात्यस्मानाष्ट्र्यां पदं कृणुते अग्निधाने।**
**शं नो गोभ्यश्च पुरुषेभ्यश्चास्तु मा नो हिंसीदिह देवाः कपोतः ॥३॥**

तिखा पँखेटा भएका यस कपोतले हाम्रो अनिष्ट नगरोस्। अग्निदेव प्रतिष्ठित हुने विस्तृत स्थानमा यो विराजमान होस्। गाई र मानिसका लागि यो सुखदायी होस्। हे देवता हो ! यस कपोतले हामीलाई यहाँ नमारोस्।

**यदुलूको वदति मोघमेतद्यत्कपोतः पदमग्नौ कृणोति।**
**यस्य दूतः प्रहित एष एतत्तस्मै यमाय नमो अस्तु मृत्यवे ॥४॥**

यस लाटोकोसेराले गरेका अमङ्गल ध्वनिको प्रभाव निष्फल होस्। अग्निगृहमा रहेको कपोत पनि निष्प्रभावी होस्। स्वामीबाट प्रेरित भएर कपोतका रूपमा आउने मृत्युरूपी यमलाई नमस्कार छ।

**ऋचा कपोतं नुदत प्रणोदमिषं मदन्तः परि गां नयध्वम्।**
**संयोपयन्तो दुरितानि विश्वा हित्वा न ऊर्जं प्र पतात्पतिष्ठः ॥५॥**

हे देवता हो ! उत्तम मन्त्रले स्तुति गर्दाखेरि त्याग्न योग्य कपोतलाई हाम्रा घरबाट टाढै राख। आहुतिले प्रसन्न भएर पाप नाश गर्ने गाई हामीलाई उपलब्ध गराओ। यो तीव्रगामी कपोत हाम्रो अन्न परित्याग गरेर अर्कैतिर उडेर जाओस्।

[सूक्त - १६६]

ऋषि - ऋषभ वैराज शक्वर। देवता - सपत्न हन्ता। छन्द - अनुष्टुप् महापङ्क्ति।

**ऋषभं मा समानानां सपत्नानां विषासहिम्।**
**हन्तारं शत्रूणां कृधि विराजं गोपतिं गवाम् ॥१॥**

हे इन्द्रदेव ! हामीसरहका व्यक्तिका माझमा हामीलाई श्रेष्ठता प्रदान गर। शत्रु पराजित गर्न हामी विशेष समर्थ बनौं। शत्रु संहार गरेर शोभायमान हुँदै हामी गाईका धनी बनौं।

**अहमस्मि सपत्नहेन्द्र इवारिष्टो अक्षतः।**
**अधः सपत्ना मे पदोरिमे सर्वे अभिष्ठिताः ॥२॥**

म शत्रुनाशक हुँ। इन्द्रदेवलाई झैं मलाई पनि कसैले हत्या वा आघात गर्न सक्दैन। सबै शत्रु म पैतालाले कुल्चूँ र तिनको अपमान गरूँ।

**अत्रैव वोऽपि नह्याम्युभे आर्त्नी इव ज्यया।**
**वाचस्पते नि षेधेमान्यथा मदधरं वदान् ॥३॥**

हे शत्रु हो ! धनुषको दुवै छेउ प्रत्यञ्चाले बाँधेझैं म तिमीहरूलाई यसै ठाउँमा बाँध्दछु। हे वाचस्पतिदेव ! हाम्रा वार्तामा बाधा हाल्न यिनलाई रोक।

**अभिभूरहमागमं विश्वकर्मेण धाम्ना।**
**आ वश्चित्तमा वो व्रतमा वोऽहं समितिं ददे ॥४॥**

सबैलाई पराजित गर्ने म सर्वसमर्थ तेजले सम्पन्न भएर आएको छु। हे शत्रु ! म तिम्रो बुद्धि, कर्म र सङ्गठन अस्तव्यस्त पारिदिन्छु।

योगक्षेमं व आदायाहं भूयासमुत्तम आ वो मूर्धानमक्रमीम्।
अधस्पदान्म उद्वदत मण्डूका इवोदकान्मण्डूका उदकादिव ॥५॥

अप्राप्तलाई प्राप्त गर्ने योग र त्यसलाई सुरक्षा गर्ने क्षेमको योग्यता प्राप्त गरेर म तिमीभन्दा ठूलो बनेको छु। यसैले तिमीहरूका बीचमा शीर्ष भागजस्तो श्रेष्ठ पद प्राप्त गरेको छु। जलमा रहने भ्यागुतोजस्ता तिमीहरू मेरा पैतालामुनि रहेर कराउँदै गर।

[सूक्त - १६७]

ऋषि - विश्वामित्र और जमदग्नि। देवता - इन्द्र लिङ्गोक्त देवता। छन्द - जगती।

तुभ्येदमिन्द्र परि षिच्यते मधु त्वं सुतस्य कलशस्य राजसि।
त्वं रयिं पुरुवीरामु नस्कृधि त्वं तपः परितप्याजयः स्वः ॥१॥

हे इन्द्रदेव ! मधुर सोमरस तिम्रा लागि तयार छ। तिमी नै तयार गरिराखेका कलशमा भएका सोमरसका अधिपति हौ। हाम्रा लागि मनग्गे ऐश्वर्य र वीर सन्तान प्रदान गर। तपस्या गरेर तिमीले स्वर्गमा विजय प्राप्त गरेका छौ।

स्वर्जितं महि मन्दानमन्धसो हवामहे परि शक्रं सुताँ उप।
इमं नो यज्ञमिह बोध्या गहि स्पृधो जयन्तं मघवानमीमहे ॥२॥

स्वर्गलोकमा विजय प्राप्त गर्ने र सोमरूप आहारले सन्तुष्ट हुने इन्द्रदेवलाई हामी नजिकै बोलाउँछौं। हे इन्द्रदेव ! तिमी हाम्रो यज्ञीय भावना बुझेर आऊ। ईर्ष्या गर्ने शत्रु सेनामाथि विजयी हुने ऐश्वर्यशाली इन्द्रबाट हामी मनले रुचाएको धन माग्दछौं।

सोमस्य राज्ञो वरुणस्य धर्मणि बृहस्पतेरनुमत्या उ शर्मणि।
तवाहमद्य मघवन्नुपस्तुतौ धातर्विधातः कलशाँ अभक्षयम् ॥३॥

म राजा सोम हुँ र वरुणदेवका नजिक, बृहस्पति र अनुमतिका शरणमा रहन्छु। हे इन्द्रदेव ! म तिम्रो स्तुति गर्दछु। हे धारणकर्ता विधाता ! तिम्रा निर्देशमा मैले कलशमा बचेको यज्ञको सोमरस सेवन गरेको हुँ।

प्रसूतो भक्षमकरं चरावपि स्तोमं चेमं प्रथमः सूरिरुन्मृजे।
सुते सातेन यद्यागमं वां प्रति विश्वामित्रजमदग्नी दमे ॥४॥

हे बलशाली इन्द्रदेव ! तिमीबाट प्रेरित भएर हामीले यज्ञमा चरुसँगै अन्य हवनीय द्रव्य तयार गरेका छौं। सर्वप्रमुख स्तोता भएर म यो स्तोत्र तिम्रा लागि उच्चारण गर्दछु। हे विश्वामित्र र जमदग्नि ! यज्ञशालामा सोम पेल्ने काम भएपछि म धन लिएर आउँछु। त्यसपछि तिमीहरू गतिलो गरी स्तोत्र उच्चारण गर।

[सूक्त - १६८]

ऋषि - अनिल वातायन। देवता - वायु। छन्द - त्रिष्टुप्।

वातस्य नु महिमानं रथस्य रुजन्नेति स्तनयन्नस्य घोषः।
दिविस्पृग्यात्यरुणानि कृण्वन्नुतो एति पृथिव्या रेणुमस्यन् ॥१॥

तीव्र वेगले बहने वायुदेवका महत्त्वको हामी गुणगान गर्दछौं। उनी विभिन्न किसिमको ध्वनि उत्पन्न गर्दै बोटबिरुवा लतार्दै, आकाश व्याप्त गर्दै र चारैतिर रातो वर्ण उत्पन्न गराउँदै गमन गर्छन्। तिनले पृथ्वीको धुलोकसिङ्गर जताततै पुऱ्याउँछन्।

सम्प्रेरते अनु वातस्य विष्ठा ऐनं गच्छन्ति समनं न योषाः।
ताभिः सयुक्सरथं देव ईयतेऽस्य विश्वस्य भुवनस्य राजा ॥२॥

वायुका तीव्र वेगले पर्वत आदि पनि कम्पायमान हुन्छन्। युद्धस्थलतिर जान लागेका अश्वझैं वृक्षले वायुकै आश्रत लिन्छन्। वायुदेव वृक्षरूपी रथमा आरूढ भएर सम्पूर्ण भुवनका राजाजस्तै भएर चल्दछन्।

अन्तरिक्षे पथिभिरीयमानो न नि विशते कतमच्चनाहः।
अपां सखा प्रथमजा ऋतावा क्व स्विज्जातः कुत आ बभूव ॥३॥

अन्तरिक्षका विभिन्न मार्गमा चल्ने वायु कहिल्यै स्थिर छैनन्। जलका मित्र, प्राणीभन्दा पहिले जन्मने र सत्यधर्मका अधिपति वायुदेव कहाँ उत्पन्न भएर कताबाट आए ?

आत्मा देवानां भुवनस्य गर्भो यथावशं चरति देव एषः।
घोषा इदस्य शृण्विरे न रूपं तस्मै वाताय हविषा विधेम ॥४॥

वायुदेव समस्त देवताका आत्मा र भुवनका गर्भरूप हुन्। यिनी स्वेच्छाले विचरण गर्छन्। यिनको शब्द नै विचित्र सुनिन्छ। यिनको स्वरूप प्रत्यक्ष रूपमा देखिँदैन यी वायुदेवलाई हामी हवि समर्पित गर्दै अर्चना गर्दछौं।

[सूक्त - १६९]

ऋषि - शबर काक्षीवत। देवता - गाई। छन्द - त्रिष्टुप।

मयोभूर्वातो अभि वातूस्रा ऊर्जस्वतीरोषधीरा रिशन्ताम्।
पीवस्वतीर्जीवधन्याः पिबन्त्ववसाय पद्वते रुद्र मृड ॥१॥

सबैलाई सुख दिने वायुदेव गाईतिर बहन्छन्। बल प्रदान गर्ने औषधि गाईले सेवन गरुन्। श्रेष्ठ र प्राणलाई सन्तुष्टि प्रदान गर्ने जलको सेवन गरुन्। हे रुद्रदेव ! दुधरूपी पोषक रस दिने गाईलाई सुख प्रदान गर।

याः सरूपा विरूपा एकरूपा यासामग्निरिष्ट्या नामानि वेद।
या अङ्गिरसस्तपसेह चक्रुस्ताभ्यः पर्जन्य महि शर्म यच्छ ॥२॥

उस्तै रूपरङ्ग, विभिन्न वर्ण र एकै आकृतिका गाईलाई अग्निदेव चिन्दछन्। हे पर्जन्य ! अङ्गिराका तपस्याका साधनले उत्पन्न गरेका गाईलाई सुख प्रदान गर।

या देवेषु तन्वा मैरयन्त यासां सोमो विश्वा रूपाणि वेद।
ता अस्मभ्यं पयसा पिन्वमानाः प्रजावतीरिन्द्र गोष्ठे रिरीह ॥३॥

देवयज्ञका लागि आफ्ना शरीरबाट दुध प्रदान गर्ने, सोमदेवले जसका दुध आदिको रसका ज्ञान पाएका गाई हुन्। हे इन्द्रदेव ! आफ्ना दुधले पोषण प्रदान गर्ने गाईलाई असल सन्तानयुक्त बनाएर हाम्रा गोठमा पठाइदेऊ।

प्रजापतिर्मह्यमेता रराणो विश्वैर्देवैः पितृभिः संविदानः।
शिवाः सतीरुप नो गोष्ठमाकस्तासां वयं प्रजया सं सदेम ॥४॥

देवता र पितृहरूसित परामर्श गरेर प्रजापतिले यी उत्तम गाई हामीलाई दिएका हुन्। यी सबै गाई हितकारी बनाएर उनले हाम्रा गोठमा पठाऊन्। तिनीबाट सन्तान र दुध पाएर हामी वैभवशाली बनौं।

[सूक्त - १७०]

ऋषि - विभ्राट् सौर्य। देवता - सूर्य। छन्द - जगती आस्तार पङ्क्ति।

विभ्राड् बृहत्पिबतु सोम्यं मध्वायुर्दधद्यज्ञपतावविह्रुतम्।
वातजूतो यो अभिरक्षति त्मना प्रजाः पुपोष पुरुधा वि राजति ॥१॥

अत्यन्त तेजस्वी सूर्यदेव प्रचुर मात्रामा सोमपान गरुन्। याजकलाई बाधारहित लामो आयु प्रदान गरुन्। सूर्यदेव वायुबाट प्रेरित रश्मिका माध्यमबाट सम्पूर्ण जगत्को पोषण गर्दछन् र उनलाई आभा आदिले पुष्ट गरेर विविध रूपमा प्रकाशित गर्दछन्।

विभ्राड् बृहत्सुभृतं वाजसातमं धर्मन्दिवो धरुणे सत्यमर्पितम्।
अमित्रहा वृत्रहा दस्युहंतमं ज्योतिर्जज्ञे असुरहा सपत्नहा ॥२॥

विशेष तेजयुक्त, महान्, उत्तम पोषक, अन्न र बलप्रदायक, धर्मका कारण आकाश धारण गर्ने, शत्रुनाशक, वृत्रसंहारक, दुष्ट र राक्षसका विनाशक सूर्यदेव आफ्नो प्रकाश चारैतिर विस्तृत गर्दछन्।

इदं श्रेष्ठं ज्योतिषां ज्योतिरुत्तमं विश्वजिद्धनजिदुच्यते बृहत्।
विश्वभ्राड् भ्राजो महि सूर्यो दृश उरु पप्रथे सह ओजो अच्युतम् ॥३॥

प्रकाशपुञ्ज, सर्वश्रेष्ठ ज्योतिरूपी सूर्यदेव विश्वविजेता हुन्। प्रकाशमान, धनविजेता, महान जगतका प्रकाशक, अविनाशी सूर्यदेव ओज प्रसार गर्दछन्।

विभ्राजञ्ज्योतिषा स्व१रगच्छो रोचनं दिवः।
येनेमा विश्वा भुवनान्याभृता विश्वकर्मणा विश्वदेव्यावता ॥४॥

हे दिव्यलोकगामी सूर्यदेव ! तिमी आफ्ना ज्योतिले सारा विश्व प्रकाशित गर्दछौ। विश्वसंरक्षक र कल्याणकारी तेजले तिमी यी सबै लोकलाई पोषण प्रदान गर्दछौ।

[सूक्त - १७१]

ऋषि - इट भार्गव। देवता - इन्द्र। छन्द - गायत्री।

**त्वं त्यमिटतो रथमिन्द्र प्रावः सुतावतः। अशृणोः सोमिनो हवम् ॥१॥**

हे इन्द्रदेव ! इट नामका तीव्र गति भएका ऋषिले पेलेको सोमरस समर्पित गर्दा तिमीले उनलाई दिव्य संरक्षण प्रदान गऱ्यौ र सोमयुक्त उनका स्तोत्रको अभिप्राय सुन्यौ।

**त्वं मखस्य दोधतः शिरोऽव त्वचो भरः। अगच्छः सोमिनो गृहम् ॥२॥**

हे इन्द्रदेव ! तिमीले देवताका नजिकबाट भाग्ने, यज्ञमा बाधा हाल्नेको टाउको शरीरबाट छुट्यायौ र सोमयुक्त हाम्रा यी इट ऋषिका घरमा तिमी पस्यौ।

**त्वं त्यमिन्द्र मर्त्यमास्त्रबुध्नाय वेन्यम्। मुहुः श्रथ्ना मनस्यवे ॥३॥**

हे इन्द्र ! अस्त्रबुध्नका पुत्रले बारम्बार तिम्रो प्रार्थना गरे, त्यसो हुँदा तिमीले वेनका पुत्र पृथुलाई उनका अधीनस्थ गरायौ।

**त्वं त्यमिन्द्र सूर्यं पश्चा सन्तं पुरस्कृधि। देवानां चित्तिरो वशम् ॥४॥**

हे इन्द्रदेव ! साँझपख सूर्य पश्चिममा अस्ताएपछि कता गए भनेर देवताले पनि जानेका हुँदैनन्। त्यसपछि तिमी सूर्यदेवलाई बिहानीपख पूर्वतिर प्रकट गराउँछौ।

[सूक्त - १७२]

ऋषि - संवर्त आङ्गिरस। देवता - उषा। छन्द - द्विपदा विराट्।

**आ याहि वनसा सह गावः सचन्त वर्तनिं यदूधभिः ॥१॥**

हे उषादेवी ! मन पर्ने प्रकाशसँग तिमी पृथ्वीमा आऊ। दुधले भरिएका थुन भएका गाई बाटामा हुनेछन्।

**आ यामि वस्व्या धिया मंहिष्ठो जारयन्मखः सुदानुभिः ॥२॥**

हे उषादेवी ! राम्रो स्तोत्र ग्रहण गर्न तिमी आऊ। याज्ञिकहरू उत्तम दानसामग्री लिएर असल भावनाले यज्ञ सम्पन्न गर्दछन्।

**पितुभृतो न तन्तुमित्सुदानवः प्रति दध्मो यजामसि ॥३॥**

अन्नको सङ्ग्रह गरेर हामी अति राम्रो द्रव्य दान गर्न प्रस्तुत छौं। सूत्रजस्तै यज्ञ हामी विस्तृत गर्दछौं र यज्ञबाट उषादेवीको स्तुति गर्दछौं।

**उषा अप स्वसुस्तमः सं वर्तयति वर्तनिं सुजातता ॥४॥**

उषादेवी दिदीबहिनीजस्ती रात्रिको अन्धकार आफ्नै रश्मिले हटाउँदै उत्तम प्रकाशले आफ्नो मार्ग प्रकाशित गराउँछिन्।

[सूक्त - १७३]

ऋषि - ध्रुव आङ्गिरस। देवता - राजा। छन्द - अनुष्टुप्।

**आ त्वाहार्षमन्तरेधि ध्रुवस्तिष्ठाविचाचलिः।**
**विशस्त्वा सर्वा वाञ्छन्तु मा त्वद्राष्ट्रमधि भ्रशत् ॥१॥**

हे राजन् ! तिमीलाई यस ठाउँको अधिपति र स्वामी बनाइएका छौं। नित्य अविचल र स्थिर भएका तिमीलाई प्रजाले रुचाऊन्। तिम्रा कारणले राष्ट्रको गौरव क्षीण नहोस्।

**इहैवैधि माप च्योष्ठाः पर्वत इवाविचाचलिः।**
**इन्द्र इवेह ध्रुवस्तिष्ठेह राष्ट्रमु धारय ॥२॥**

तिमी यसै ठाउँमा अडिग होऊ। कहिल्यै पदवञ्चित नभईकन पर्वतजस्तै निश्चल भएर बस। स्वर्गमा इन्द्रदेव भएजस्तै पृथिवीमा तिमी स्थिर शासन र राष्ट्रको नेतृत्व गर।

**इममिन्द्रो अदीधरद् ध्रुवं ध्रुवेण हविषा।**
**तस्मै सोमो अधि ब्रवत्तस्मा उ ब्रह्मणस्पतिः ॥३॥**

इन्द्रदेवले यस आधिपत्यलाई अक्षय यजनीय सामग्री उपलब्ध गराएर स्थिरता प्रदान गरुन्। सोमले आफ्नो आत्मीय मानून्। ब्रह्मणस्पतिले पनि आत्मीय ठानून्।

**ध्रुवा द्यौर्ध्रुवा पृथिवी ध्रुवासः पर्वता इमे।**
**ध्रुवं विश्वमिदं जगद् ध्रुवो राजा विशामयम् ॥४॥**

आकाश, पृथिवी र सम्पूर्ण पर्वत निश्चल भएझैँ प्रजाका स्वामी राजा निश्चल रहून्।

**ध्रुवं ते राजा वरुणो ध्रुवं देवो बृहस्पतिः।**
**ध्रुवं त इन्द्रश्चाग्निश्च राष्ट्रं धारयतां ध्रुवम् ॥५॥**

हे राजन् ! तिम्रो राष्ट्र वरुणदेवले स्थायी गरुन्। दिव्य गुणले सम्पन्न बृहस्पतिदेवले स्थिरता प्रदान गरुन्। इन्द्रदेव र अग्निदेवले तिम्रो राष्ट्र स्थिर रूपले धारण गरुन्।

**ध्रुवं ध्रुवेण हविषाभि सोमं मृशामसि।**
**अथो त इन्द्रः केवलीर्विशो बलिहृतस्करत् ॥६॥**

नित्य रहने हविले हामी सोमदेवलाई सन्तुष्ट गर्दछौँ। उनले हामीलाई स्थिरता प्रदान गरुन्। हे राजन् ! इन्द्रदेवले प्रजालाई केवल तिम्रै निम्ति कर तिर्ने बनाऊन्।

## [सूक्त - १७४]

**ऋषि** - अभीवर्त आङ्गिरस। **देवता** - राजा। **छन्द** - अनुष्टुप्।

**अभीवर्तेन हविषा येनेन्द्रो अभिवावृते।**
**तेनास्मान्ब्रह्मणस्पतेऽभि राष्ट्राय वर्तय ॥१॥**

हे ब्रह्मणस्पति ! हवि आदि यज्ञका साधनले युक्त भएर हामी इन्द्रदेवनजिक जान्छौँ। उनै यज्ञ साधनले हामीलाई तिमी राष्ट्रको हितका लागि प्रोत्साहित गर।

**अभिवृत्य सपत्नानभि या नो अरातयः।**
**अभि पृतन्यन्तं तिष्ठाभि यो न इरस्यति ॥२॥**

हे राजन् ! हाम्रा विरोधी र हिंसक भएर हामीसित युद्ध गर्न खोज्ने वा रिसडाह गर्ने शत्रुसेनालाई छेकारो मारेर परास्त गरिदेऊ।

**अभि त्वा देवः सविताभि सोमो अवीवृतत्।**
**अभि त्वा विश्वा भूतान्यभीवर्तो यथाससि ॥३॥**

हे राजन् ! सवितादेव, सोमदेव र समस्त प्राणीसमुदाय तिमीलाई शासनमा बस्नका लागि सहयोग गरुन्। यी सबैको अनुकूलताले तिमी राम्ररी शासन गर।

**येनेन्द्रो हविषा कृत्व्यभवद् द्युम्न्युत्तमः।**
**इदं तदक्रि देवा असपत्नः किलाभुवम् ॥४॥**

हे देवता हो ! इन्द्रदेव क्रियाशील, अन्नका धनी र श्रेष्ठ बन्नका लागि हामीले हवि आदि साधन बनाएका छौँ। यसै कारण हामी शत्रुविहीन बन्न सकेका हौँ।

**असपत्नः सपत्नहाभिराष्ट्रो विषासहिः।**
**यथाहमेषां भूतानां विराजानि जनस्य च ॥५॥**

शत्रु समाप्त पारेर मैले आफैँलाई अजातशत्रु सिद्ध गरेको छु। शासनमा बसेको हुनाले शत्रु पराजित गर्नमा म समर्थ भएको छु। मैले सबै प्राणी र अधिकारी आफ्ना अधीनमा राखेको छु।

## [सूक्त - १७५]

**ऋषि** - ऊर्ध्वग्रावा आर्बुदि। **देवता** - ग्रावा (प्रस्तर-खण्ड)। **छन्द** - गायत्री।

**प्र वो ग्रावाणः सविता देवः सुवतु धर्मणा। धूर्षु युज्यध्वं सुनुत ॥१॥**

हे ग्रावा ! सवितादेवले आफ्ना सामर्थ्यले तिमीलाई सोमरस पेल्ने कार्यमा प्रेरित गरुन्। तिमी पेल्ने ठाउँमा काममा खटिएका छौ, त्यसैले सोमरस तयार गर।

**ग्रावाणो अप दुच्छुनामप सेधत दुर्मतिम्। उस्राः कर्तन भेषजम् ॥२॥**

हे ग्रावा ! दुःख दिने प्रजालाई तिमी हामीबाट टाढा लैजाऊ। दुर्बुद्धि हटाइदेऊ। सुखदायक औषधिलाई हाम्रा लागि रसप्रदायक बनाऊ।

**ग्रावाण उपरेष्वा महीयन्ते सजोषसः। वृष्णे दधतो वृष्ण्यम् ॥३॥**

ढुङ्गाहरू एकआपसमा मिलेर एउटा ठूलो ढुङ्गालाई चारैतिरबाट सजाएका छन्। रस बर्साउने सोमप्रति तिनीहरू आफ्नो बल प्रयोग गर्दछन्।

ग्रावाणः सविता नु वो देवः सुवतु धर्मणा। यजमानाय सुन्वते ॥४॥
हे पाषण हो ! सवितादेव आफ्ना सामर्थ्यले तिमीलाई यजमानका निम्ति सोम पेल्न प्रेरित गरुन्।

[सूक्त - १७६]

ऋषि - सुनू आर्भव। देवता - ऋभुगण अग्नि। छन्द - अनुष्टुप् जगती।

**प्र सूनव ऋभूणां बृहन्नवन्त वृजना।**
**क्षामा ये विश्वधायासोऽश्नन्धेनुं न मातरम् ॥१॥**

ऋभुहरू यश प्राप्तिका लागि सङ्ग्राममा प्रवृत्त भएका छन्। बाछाले आफ्नो माउ छेकेर उभिएझैं यी विश्वका आधार ऋभुहरू पृथ्वीका चारैतिर व्याप्त भएर बसेका छन्।

**प्र देवं देव्या धिया भरता जातवेदसम्। हव्या नो वक्षदानुषक् ॥२॥**

हे स्तोता हो ! तिमीहरू दिव्य गुणले सम्पन्न, सम्पूर्ण विश्वका ज्ञाता अग्निदेवको उपासना गर। उनी दिव्य बुद्धिले हाम्रो हव्य विधिपूर्वक देवताका समीप पुऱ्याऊन्।

**अयमु ष्य प्र देवयुर्होता यज्ञाय नीयते।**
**रथा न योरभीवृतो घृणीवाञ्चेतति त्मना ॥३॥**

देवतालाई बोलाउने अग्निदेव हुन्। उनी देवताका नजिकै जान्छन् र यज्ञका लागि विशेष रूपले ल्याउने गर्दछन्। उनी रथजत्तिकै दीप्तिमान् र यज्ञ राम्ररी सम्पन्न गर्न जान्ने हुनाले याज्ञिकले घेरिएका हुन्छन्।

**अयमग्निरुरुष्यत्यमृतादिव जन्मनः।**
**सहसश्चित्सहीयान्देवो जीवातवे कृतः ॥४॥**

अग्निदेव अमृतजस्तै बनेर सांसारिक भयबाट हामीलाई संरक्षण गर्दछन्। बलवान्‌मध्ये अति बलवान् अग्निलाई विधाताले जीवको आयु वृद्धि गर्न उत्पन्न गरेका हुन्।

[सूक्त - १७७]

ऋषि - पतङ्ग प्राजापत्य। देवता - मायाभेद। छन्द - त्रिष्टुप् जगती।

**पतङ्गमक्तमसुरस्य मायया हृदा पश्यन्ति मनसा विपश्चितः।**
**समुद्रे अन्तः कवयो वि चक्षते मरीचीनां पदमिच्छन्ति वेधसः ॥१॥**

बलियो मायाले छोपिएको एउटा पतङ्ग मेधावीले देखे। कवि आकाशको कुरो जान्दछन्। उनले प्रकाशयुक्त पद पाउने रहर गर्दछन्।

**पतङ्गो वाचं मनसा बिभर्ति तां गन्धर्वोऽवदद् गर्भे अन्तः।**
**तां द्योतमानां स्वर्यं मनीषामृतस्य पदे कवयो नि पान्ति ॥२॥**

विवेकी पतङ्गका मनले दिव्यवाणी धारण गर्दछ। गन्धर्व देवताले उसका मनमा गर्भावस्थामा ज्ञानको बीजारोपण गर्दछन्। यो वाणी दिव्यतायुक्त सुख र बुद्धिको अधिष्ठात्री हो। सत्यमार्गका साधकले यस वाणीको रक्षा गर्दछन्।

**अपश्यं गोपामनिपद्यमानमा च परा च पथिभिश्चरन्तम्।**
**स सध्रीचीः स विषूचीर्वसान आ वरीवर्ति भुवनेष्वन्तः ॥३॥**

गाईका धनीजस्ता यिनको पतन कहिल्यै हुँदैन भन्ने हाम्रो अनुभव छ। उनी कहिले नजिकै र कहिले टाढाका विभिन्न मार्गमा विचरण गर्दछन्। उनी कहिले अनेकौं वस्त्र एकै चोटि लगाउँछन् र कहिले अलगअलग। फराकिला दिशा आफ्ना ज्योतिले प्रकट गराउँदै संसारमा बारम्बार भ्रमण गर्दछन्।

[सूक्त - १७८]

ऋषि - अरिष्टनेमि तार्क्ष्य। देवता - तार्क्ष्य। छन्द - त्रिष्टुप्।

**त्यमू षु वाजिनं देवजूतं सहावानं तरुतारं रथानाम्।**
**अरिष्टनेमिं पृतनाजमाशुं स्वस्तये तार्क्ष्यमिहा हुवेम ॥१॥**

हामी आफ्नो कल्याणका लागि देवताबाट सेवित, शक्तिशाली, सङ्ग्रामबाट उद्धार गर्ने कार्यमा सक्षम, शत्रुसेनामाथि विजय प्राप्त गर्ने, नरोकिने खालको गति भएका, तीव्र गतिले उड्न सक्ने तार्क्ष्य भनिएका गरुड वा सूर्यलाई आह्वान गर्दछौं।

इन्द्रस्येव रातिमाजोहुवानाः स्वस्तये नावमिवा रुहेम।
उर्वी न पृथ्वी बहुले गभीरे मा वामेतौ मा परेतौ रिषाम ॥२॥

इन्द्रको जस्तै तार्क्ष्यका दानशक्तिको पनि हामी बारम्बार आह्वान गर्दछौं। हामी आफ्नो कल्याणका लागि दानशक्तिको आश्रय उसै किसिमले लिन्छौं जसरी दुर्गम समुद्र पार गर्नका लागि नौंकाको लिनुपर्दछ। हे द्यावापृथिवी ! तिमीहरू विशाल, विस्तृत, गम्भीर र प्रख्यात छौ। तार्क्ष्यले आवतजावत गराउँदा हाम्रो मृत्यु नहोस्।

सद्यश्चिद्यः शवसा पञ्च कृष्टीः सूर्य इव ज्योतिषापस्ततान।
सहस्रसाः शतसा अस्य रंहिर्न स्मा वरन्ते युवतिं न शर्याम् ॥३॥

सूर्यदेवका बलले पानीको वर्षा गराएझैं तार्क्ष्यका बलले पाँचै किसिमका मानिसलाई ऐश्वर्यले परिपूर्ण गराएको छ। उनै तार्क्ष्यको वेगले असङ्ख्य किसिमका धन प्रदान गर्दछ। धनुषबाट छुटेको वाणजस्तै यिनको वेग रोक्ने शक्ति कसैसित पनि छैन।

[सूक्त - १७९]

**ऋषि** - शिबि औशीनर प्रतर्दन रोहिदश्व। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप् अनुष्टुप्।

उत्तिष्ठताव पश्यतेन्द्रस्य भागमृत्वियम्।
यदि श्रातो जुहोतन यद्यश्रातो ममत्तन ॥१॥

हे स्तोता हो ! उठ र इन्द्रदेवका लागि उचित खालको यज्ञको भाग तयार गर। यजनीय भाग पकाइसकिएको छ भने उनका लागि यजन गर। पाकिसकेको छैन भने पकाउने काम चाँडो गर।

श्रातं हविरो ष्विन्द्र प्र याहि जगाम सूरो अध्वानो विमध्यम्।
परि त्वासते निधिभिः सखायः कुलपा न व्राजपतिं चरन्तम् ॥२॥

हे इन्द्रदेव ! हविको भाग तयार भयो। तिमी चाँडै नजिक आऊ। सूर्यदेव मार्गका बीचमा आएका छन्। कुलको संरक्षक पुत्र वरपर घुम्न गएको घरमुली पर्खेझैं सखा ऋत्विक्हरू विभिन्न प्रकारको सोम आदि यज्ञीय सामग्री लिएर तिमीलाई पर्खन्छन्।

श्रातं मन्य ऊधनि श्रातमग्नौ सुश्रातं मन्ये तदृतं नवीयः।
माध्यन्दिनस्य सवनस्य दध्नः पिबेन्द्र वज्रिन्पुरुकृज्जुषाणः ॥३॥

गाईका थुनमा सबैभन्दा पहिले दुधरूपी हवि परिपुष्ट हुन्छ। त्यही दुध अग्निमा पाक्छ। दुधले उत्तम पाक पाएर अत्यन्त पवित्र र नयाँ रूप धारण गर्छ। पराक्रमी, वृत्रहन्ता र वज्रधारी हे इन्द्रदेव ! तिमी मध्याह्न यज्ञमा समर्पित सोमरस खुसी मनले पान गर।

[सूक्त - १८०]

**ऋषि** - जय ऐन्द्र। **देवता** - इन्द्र। **छन्द** - त्रिष्टुप्।

प्र ससाहिषे पुरुहूत शत्रूञ्ज्येष्ठस्ते शुष्म इह रातिरस्तु।
इन्द्रा भर दक्षिणेना वसूनि पतिः सिन्धूनामसि रेवतीनाम् ॥१॥

हे सबैले स्तुति गर्ने इन्द्रदेव ! तिमी शत्रु पराजित गर्न समर्थ छौ। सर्वोत्तम तेज हुने तिम्रो कृपादृष्टि हामीलाई उपलब्ध होस्। तिमी दाहिने हातले विभिन्न किसिमको ऐश्वर्य हामीलाई देऊ। ऐश्वर्यका स्रोत र अधिपति तिमी नै हौ।

मृगो न भीमः कुचरो गिरिष्ठाः परावत आ जगन्था परस्याः।
सृकं संशाय पविमिन्द्र तिग्मं वि शत्रून्ताढि वि मृधो नुदस्व ॥२॥

हे इन्द्रदेव ! तिमी पर्वतीय हिंस्रक सिंहजस्तै भयङ्कर छौ। तिमी टाढाबाट यहाँ आएर टाढासम्म हान्न सकिने वज्र धारिलो बनाएर शत्रु विनाश गर। लडाइँ गर्न खोज्ने असुर पर पुऱ्याऊ।

इन्द्र क्षत्रमभि वाममोजोऽजायथा वृषभ चर्षणीनाम्।
अपानुदो जनममित्रयन्तमुरुं देवेभ्यो अकृणोरु लोकम् ॥३॥

हे इन्द्रदेव ! तिमीले जन्मजात तेज प्राप्त गरेका छौ। यसै सामर्थ्यले तिमी अत्याचारी विरोधीको सामना गर्दछौ। हे मनको रहर पूरा गराउने इन्द्रदेव ! हामीजस्ता मानिससित शत्रुता गर्ने दुष्टलाई तिमी पर भगाउने गर्दछौ। तिमीले नै देवताका लागि विस्तृत स्वर्गको रचना गरेका हौ।

[सूक्त - १८१]

ऋषि - प्रथ वासिष्ठ सप्रथ भारद्वाज घर्म सौर्य। देवता - विश्वेदेवा। छन्द - त्रिष्टुप्।

**प्रथश्च यस्य सप्रथश्च नामानुष्टुभस्य हविषो हविर्यत्।**
**धातुर्द्युतानात्सवितुश्च विष्णो रथन्तरमा जभारा वसिष्ठः ॥१॥**

विस्तृत र सुविख्यातको अर्थ लाग्ने खालको प्रथ र सप्रथ नाम भएका वसिष्ठले अनुष्टुप् छन्दले हविष्यात्र अर्पण गरे। उनले धारणकर्ता, तेजस्वी सविता र विष्णुबाट रथान्तर साम प्राप्त गरे।

**अविन्दन्ते अतिहितं यदासीद्यज्ञस्य धाम परमं गुहा यत्।**
**धातुर्द्युतानात्सवितुश्च विष्णोर्भरद्वाजो बृहदा चक्रे अग्नेः ॥२॥**

यज्ञका परम आधार र अत्यन्त गोप्य, तेजस्वी, बृहत् साम सविता आदि देवताले प्राप्त गरे। धातादेव, तेजस्वी सवितादेव, विष्णुदेव र अग्निदेवका नजिकै भरद्वाज ऋषि यही बृहत् साम लिएर आऊन्।

**तेऽविन्दन्मनसा दीध्याना यजुः ष्कन्नं प्रथमं देवयानम्।**
**धातुर्द्युतानात्सवितुश्च विष्णोरा सूर्यादभरन्घर्ममेते ॥३॥**

अभिषेक आदि क्रिया पूरा गराउने, घर्मको यज्ञीय कार्यमा अति महत्त्वपूर्ण भूमिका हुन्छ। धाता आदि देवताले उनलाई मनन गरेर फेला पारे। ऋत्विक्हरू धाता, विष्णु, सूर्य र तेजस्वी सविताका नजिकैबाट घर्मलाई लिएर आऊन्।

[सूक्त - १८२]

ऋषि - तपुमूर्धा बार्हस्पत्य। देवता - बृहस्पति। छन्द - त्रिष्टुप्।

**बृहस्पतिर्नयतु दुर्गहा तिरः पुनर्नेषदघशंसाय मन्म।**
**क्षिपदशस्तिमप दुर्मतिं हन्नथा करद्यजमानाय शं योः ॥१॥**

बृहस्पतिदेवले हाम्रो दुःख मेटाऊन्। उनले हामीप्रति दुर्भावना राख्ने मानिसलाई पर हटाउनका लागि तेजस्वी शस्त्र प्रयोग गरुन्। उनले अमङ्गल र दुर्बुद्धि नाश गरुन्। उनले यजमानको रोग मेटाऊन् र निर्भय गराऊन्।

**नराशंसो नोऽवतु प्रयाजे शं नो अस्त्वनुयाजो हवेषु।**
**क्षिपदशस्तिमप दुर्मतिं हन्नथा करद्यजमानाय शं योः ॥२॥**

यज्ञको प्रयाजमा नराशंस अग्निले हाम्रो रक्षा गरुन्, अनुयाजमा शान्ति प्रदान गरुन्। उनले अनिष्ट मेटाएर दुर्बुद्धि नाश गरुन्। यजमानलाई शान्ति प्रदान गरेर निर्भय गरुन्।

**तपुर्मूर्धा तपतु रक्षसो ये ब्रह्मद्विषः शरवे हन्तवा उ।**
**क्षिपदशस्तिमप दुर्मतिं हन्नथा करद्यजमानाय शं योः ॥३॥**

ब्रह्मद्वेषीलाई बृहस्पतिदेवले डढाऊन् र हिंसक शत्रु नाश गरुन्। अनिष्ट निवारण गर्दै दुर्मति र दुर्भावना विनाश गरुन्। यजमानलाई निर्भय प्रदान गर्दै सुखशान्ति दिऊन्।

[सूक्त - १८३]

ऋषि - प्रजावान् प्राजापत्य। देवता - यजमान, यजमान पत्नी। छन्द - त्रिष्टुप्।

**अपश्यं त्वा मनसा चेकितानं तपसो जातं तपसो विभूतम्।**
**इह प्रजामिह रयिं रराणः प्र जायस्व प्रजया पुत्रकाम ॥१॥**

हे यजमान ! तिमी विवेकपूर्ण कर्मको ज्ञान भएका, असल कर्मका लागि उत्पन्न र तपश्चर्या आदिबाट सर्वत्र प्रसिद्ध छौ। पुत्र आदिको रहर गर्ने हे यजमान ! यस लोकमा धनसम्पत्ति र असल सन्तान पाएर तिमी सधैं खुसी मनका साथ बस।

**अपश्यं त्वा मनसा दीध्यानां स्वायां तनू ऋत्व्ये नाधमानाम्।**
**उप मामुच्चा युवतिर्बभूयाः प्र जायस्व प्रजया पुत्रकामे ॥२॥**

हे अर्द्धाङ्गिणी ! विवेकका दृष्टिले मैले तिमीलाई चिनेको छु। तिमी सुन्दर रूप भएकी छ्यौ। तिमीसित गर्भ धारण गर्ने शक्ति मैले देखेको छु। हे पुत्रको रहर लिएकी भार्या ! तिम्रो कामना पूरा होस्, तिमी मातृत्वको सुख प्राप्त गर।

अहं गर्भमदधामोषधीष्वहं विश्वेषु भुवनेष्वन्तः।
अहं प्रजा अजनयं पृथिव्यामहं जनिभ्यो अपरीषु पुत्रान् ॥३॥

म होताका रूपमा औषधिमा गर्भाधान गर्दछु। म नै प्राणीलाई प्रजनन क्षमता प्रदान गर्दछु। पृथ्वीमा प्रजनन शक्तिको उत्पादन म नै गर्दछु। यज्ञ आदि क्रियाले म नै सबै स्त्रीलाई प्रजननका लागि योग्य बनाउँछु।

[सूक्त - १८४]

ऋषि - त्वष्टा गर्भकर्ता। देवता - लिङ्गोक्त देवता। छन्द - अनुष्टुप्।

विष्णुर्योनिं कल्पयतु त्वष्टा रूपाणि पिंशतु।
आ सिञ्चतु प्रजापतिर्धाता गर्भं दधातु ते ॥१॥

विष्णुदेवले गर्भधारण क्षमतासम्पन्न गराऊन्। त्वष्टादेवले विभिन्न अङ्ग निर्माण गरुन्। प्रजापति सेचन प्रक्रियामा सहायक होऊन् र धाताले गर्भधारणमा सहयोग गरुन्।

गर्भं धेहि सिनीवालि गर्भं धेहि सरस्वति।
गर्भं ते अश्विनौ देवावा धत्तां पुष्करस्रजा ॥२॥

हे सिनीवाली ! तिमी गर्भको संरक्षण गर। हे सरस्वतीदेवी ! तिमी गर्भधारणमा सहायक होऊ। हे स्त्री ! सुनौलो कमलका गहना लगाउने अश्विनीकुमारले तिम्रा गर्भमा स्थिरता प्रदान गरुन्।

हिरण्ययी अरणी यं निर्मन्थतो अश्विना।
तं ते गर्भं हवामहे दशमे मासि सूतवे ॥३॥

गर्भका सन्तानको रक्षाका लागि अश्विनीकुमार सुनौला अरणी घोट्तछन्। त्यस गर्भमा रहेका सन्तानलाई हामी दसौं महिनामा प्रसूत हुनका लागि बोलाउँछौं।

[सूक्त - १८५]

ऋषि - सत्यधृति वारुणि। देवता - आदित्य। छन्द - गायत्री।

महि त्रीणामवोऽस्तु द्युक्षं मित्रस्यार्यम्णः। दुराधर्षं वरुणस्य ॥१॥

मित्र, वरुण र अर्यमा तीन देवताको तेजस्वी, संयुक्त अवस्थाको संरक्षण हामीलाई प्राप्त होस्। त्यसबाट हामी अर्कालाई पराजित गर्न सक्षम होऔं।

नहि तेषाममा चन नाध्वसु वारणेषु। ईशे रिपुरघशंसः ॥२॥

यी देवताका आश्रयमा रहनेलाई अनिष्टकारी आसुरी शक्तिले केही बिगार्न सक्दैन। देवताका कृपाले उनीहरूको आवास र यात्रा सुरक्षित हुन्छ।

यस्मै पुत्रासो अदितेः प्र जीवसे मर्त्याय। ज्योतिर्यच्छन्त्यजस्रम् ॥३॥

अदितिदेवीका तीन पुत्रले सुरक्षाका लागि तेज प्रदान गरेका मानिसलाई कुनै दुष्ट शत्रुले केही बिगार गर्न सक्दैन। शत्रुका सबै प्रयास नै असफल हुन्छन्।

[सूक्त - १८६]

ऋषि - उल वातायन। देवता - वायु। छन्द - गायत्री।

वात आ वातु भेषजं शम्भु मयोभु नो हृदे। प्र ण आयूंषि तारिषत् ॥१॥

हाम्रा हृदयमा शान्ति र सुख दिन सक्ने औषधिलाई वायुदेवले हामीकहाँ पुर्‍याऊन्। यी औषधिले हामीलाई दीर्घजीवी बनाऊन्।

उत वात पितासि न उत भ्रातोत नः सखा। स नो जीवातवे कृधि ॥२॥

हे वायुदेव ! तिमी हाम्रा लागि पिताजस्तै उत्पत्तिकर्ता, दाजुभाइजस्तै प्रिय र मित्रजस्तै हितकारी छौ। तिमी हाम्रा जीवनको रक्षा गर्न हितकारी औषधि ल्याइदेऊ।

यददो वात ते गृहेऽमृतस्य निधिर्हितः। ततो नो देहि जीवसे ॥३॥

हे सर्वत्र गमन गर्ने स्वभावका वायुदेव ! तिमीसित भएको प्राणरूप जीवनतत्त्वको भण्डार हाम्रा हितका लागि यहाँ पुर्‍याइदेऊ।

[सूक्त - १८७]

ऋषि - वत्स आग्नेय। देवता - अग्नि। छन्द - गायत्री।

प्राग्नये वाचमीरय वृषभाय क्षितीनाम्। स नः पर्षदति द्विषः ॥१॥

हे स्तोता हो ! मानिसले खोजेको कुरो पूरा गरिदिने अग्निदेवको स्तुति गर। उनले हामीलाई शत्रुको दुष्ट्याइँबाट जोगाऊन्।

यः परस्याः परावतस्तिरो धन्वातिरोचते। स नः पर्षदति द्विषः ॥२॥
टाढैंबाट अन्तरिक्ष पार गर्दै यज्ञवेदीमा प्रकट हुने अग्निदेवले शत्रुबाट हाम्रो रक्षा गरुन्।

यो रक्षांसि निजूर्वति वृषा शुक्रेण शोचिषा। स नः पर्षदति द्विषः ॥३॥
जल वर्साउने अग्निदेव आफ्ना कान्तिमान ज्वालाले यज्ञ ध्वंस गर्ने असुर संहार गर्छन्। उनै अग्निदेवले डाह गर्ने शत्रुबाट हाम्रो रक्षा गरुन्।

यो विश्वाभि विपश्यति भुवना सं च पश्यति। स नः पर्षदति द्विषः ॥४॥
सबै लोक फरकफरक रूपमा हेर्ने र एकत्र भावले हेरविचार गर्ने अग्निदेवले शत्रुको दुष्ट्याइँबाट हाम्रो रक्षा गरुन्।

यो अस्य पारे रजसः शुक्रो अग्निरजायत। स नः पर्षदति द्विषः ॥५॥
अन्तरिक्षपरि माथिल्लो दिव्यलोकमा तेजस्वी प्रकाशका रूपमा प्रकट हुने अग्निदेवले हामी सबैलाई कष्टबाट जोगाऊन्।

[सूक्त - १८८]

ऋषि - श्येन आग्नेय। देवता - जातवेदस् अग्नि। छन्द - गायत्री।

प्र नूनं जातवेदसमश्वं हिनोत वाजिनम्। इदं नो बर्हिरासदे ॥१॥
हे यजमान हो ! सर्वज्ञ, सर्वव्यापक र अन्नवान् अग्निदेवलाई प्रदीप्त गराओ। हामीले ओछ्याएका आसनमा उनी विराजमान होऊन्।

अस्य प्र जातवेदसो विप्रवीरस्य मीढ्हुषः। महीमियर्मि सुष्टुतिम् ॥२॥
विद्वान् याजक अग्निदेवलाई पुत्रझैं उत्पन्न गर्दछन्। अग्निदेवले नै जल वर्साउँछन्। असल स्तोत्र गाउँदै हामी उनको वन्दना गर्दछौं।

या रुचो जातवेदसो देवत्रा हव्यवाहनीः। ताभिर्नो यज्ञमिन्वतु ॥३॥
सर्वज्ञ अग्निदेव काली, कराली आदि सात जिब्राले देवताकहाँ हवि लिएर जान्छन्। तिनै ज्वालासँग उनी हाम्रा यज्ञमा उपस्थित होऊन्।

[सूक्त - १८९]

ऋषि - सार्पराज्ञी। देवता - सार्पराज्ञी अथवा सूर्य। छन्द - गायत्री।

आयं गौः पृश्निरक्रमीदसदन् मातरं पुरः। पितरं च प्रयन्त्स्वः ॥१॥
गतिमान सूर्यदेव प्रकट भए। सबैभन्दा पहिले उनी माता पृथ्वी, पिता स्वर्ग र अन्तरिक्ष प्राप्त गर्दछन्।

अन्तश्चरति रोचनास्य प्राणादपानती। व्यख्यन्महिषो दिवम् ॥२॥
यिनको प्रकाश आकाशमा सञ्चरित छ। रश्मिले प्राणबाट अपान प्रक्रिया सम्पन्न गराउँछ। यी महान् सूर्यदेव द्युलोकलाई विशेष रूपले प्रकाशित गर्दछन्।

त्रिंशद्धाम वि राजति वाक्पतङ्गाय धीयते। प्रति वस्तोरह द्युभिः ॥३॥
सबैका प्रेरक सूर्यदेव दिनका तीस घटीसम्म आफ्ना रश्मिले प्रकाशित हुन्छन्। यी प्रकाशित सूर्यदेवको प्रार्थना गरिन्छ।

[सूक्त - १९०]

ऋषि - अघमर्षण माधुच्छन्दस। देवता - भाववृत्त। छन्द - अनुष्टुप्।

ऋतं च सत्यं चाभीद्धात्तपसोऽध्यजायत।
ततो रात्र्यजायत ततः समुद्रो अर्णवः ॥१॥
महान् तपस्याबाट ऋत र सत्यका अधिकृत उत्पत्ति भए र रात्रि उत्पन्न भयो। त्यसपछि अर्णव समुद्र उत्पन्न भयो।

समुद्रादर्णवादधि संवत्सरो अजायत।
अहोरात्राणि विदधद्विश्वस्य मिषतो वशी ॥२॥
अर्णव अर्थात् समुद्रका माध्यमबाट संवत्सरको प्रादुर्भाव भयो। विश्वका नियन्त्रकले आँखा झिम्क्याएझैं गरी दिन र रातको स्वरूप बनाए।

सूर्याचन्द्रमसौ धाता यथापूर्वमकल्पयत्।
दिवं च पृथिवीं चान्तरिक्षमथो स्वः ॥३॥

विधाताले सूर्य-चन्द्र, आकाश-पृथ्वी, अन्तरिक्ष-स्वर्गलाई पहिलेझैं निर्माण गरे।

[सूक्त - १९१]

**ऋषि** - संवनन। **देवता** - अग्नि संज्ञान। **छन्द** - अनुष्टुप त्रिष्टुप।

**संसमिद्युवसे वृषन्नग्ने विश्वान्यर्य आ।**
**इडस्पदे समिध्यसे स नो वसून्या भर ॥१॥**

हे सुख बर्साउने अग्निदेव ! तिमी सम्पूर्ण विश्वका अधिपति भएर समस्त तत्त्वमा रहन्छौ। यज्ञको वेदी वा पृथ्वीमा नै प्रकट हुँदा हामीलाई विभिन्न ऐश्वर्य प्रदान गर।

**सङ्गच्छध्वं सं वदध्वं सं वो मनांसि जानताम्।**
**देवा भागं यथा पूर्वे सञ्जानाना उपासते ॥२॥**

हे स्तोता हो ! आपसमा मिलेर हिँड, आपसमा मिलेरै बोलचाल गर, मनको कुरो आपसमा मिलेर आदानप्रदान गर र नयाँ कुरो सिक। उहिलेका सज्जनले आपसमा मिलेर यज्ञ उपासना आदिका काम गरेझैं तिमीहरू पनि एकमत होओ।

**समानो मन्त्रः समितिः समानी समानं मनः सह चित्तमेषाम्।**
**समानं मन्त्रमभि मन्त्रये वः समानेन वो हविषा जुहोमि ॥३॥**

हे स्तोता हो ! तिमीहरू सबैको प्रार्थना एकै होस्। आपसी आत्मीयता एकै होस्। मन्त्रविचार एकै होस्। हे स्तोता हो ! म तिमीहरूको जीवन एउटै मन्त्रले शुद्धतामा अभिप्रेरित गर्दछु र एक समान आहुति प्रदान गरेर यज्ञजस्तै बनाइदिन्छु।

**समानी व आकूतिः समाना हृदयानि वः।**
**समानमस्तु वो मनो यथा वः सुसहासति ॥४॥**

हे स्तोता हो ! तिमीहरूको हृदय एकै होस्, तिमीहरूको मन एकै होस्, सङ्कल्प एकै होस्। त्यसैबाट सङ्गठित भएर तिमीहरूले आआफ्ना सबै काम पूरा गर्न सक।

**॥इति दशमं मण्डलं समाप्तम्॥**

दसौं मण्डल सकियो

**॥इति ऋग्वेदसंहिता समाप्ता॥**

॥ ऋग्वेदसंहिता सकियो ॥

